

# पवित्र कुरान

अरबी रचना

तथा

नेपाली अनुवाद

हज़रत मिर्ज़ा ताहिर अहमद

विश्वव्यापी अहमदिया मुस्लिम सम्प्रदायका प्रमुख

(तथा प्रतिश्रुत मसीहाका चतुर्थ अत्तराधिकारी)

को

तत्त्वावधानमा प्रकाशित

# THE HOLY QUR'AN

ARABIC TEXT

AND

NEPALESE TRANSLATION

Published under the auspices of :

**HADHRAT MIRZA TAHIR AHMAD**

Fourth Successor of the Promised Messiah and
The Head of the World-wide Ahmadiyya Muslim Community

2001

Islam International Publications Limited

## प्रकाशकीय टिप्पणी

पवित्र कुरान अल्लाहको वाणी हो तथा यो इस्लामका पवित्र नबी मुहम्मद (उनीप्रति अल्लाहको शान्ति र आशीर्वाद वर्षण होस्)प्रति एक एक शब्द गरी अवतीर्ण गरिएको थियो । त्यो आकाशवाणीको क्रम निरन्तर तेइस वर्षसम्म जारी रह्यो । सम्पूर्ण धर्मलिपिहरूमध्ये, केवल पवित्र कुरान नै यस्तो रहेको छ जसले यसको एक एक शब्द अल्लाहद्वारा आकाशवाणी गरिएको हो भनी दावी गर्छ । यो मुसलमानहरूको पवित्र पुस्तक हो तथा यसमा केवल मुसलमानहरूका निम्ति मात्र नभएर अन्य सबैका निम्ति सदाका लागि पूर्ण मार्गदर्शन रहेको छ । अल्लाहले सदा सर्वदा यसको (मूलभूत) रचनाको सुरक्षा गर्नेछु भनी प्रतिज्ञा गरेका छन् त्यसैकारण यसको अरबी मूलभूत रचना परिवर्तन हुन सक्दैन तथा त्यो जुनरूपमा मुहम्मद (उनीप्रति अल्लाहको शान्ति र आशीर्वाद वर्षण होस्)प्रति १४०० (चौधसय साल) भन्दा पनि अघि अवतीर्ण गरिएको थियो ठीक त्यही रूपमा आज प्राप्त छ ।

अल्लाहको पवित्र वाणीको अनुवाद गर्नु कुनै सरल कार्य होइन । विशवव्यापी अहमद्दीया सम्प्रदायले पवित्र कुरानको पृथ्वीका विभिन्न भाषाहरूमा विश्वसनीयतापूर्वक अनुवाद गर्ने जिम्मेवारी उठाएको छ ताकि यसको सन्देशलाई विभिन्न जातिका मानिसहरूसमक्ष तिनीहरूको आफ्नै भाषामा पुऱ्याउन सकियोस् । डा. प्रेम कुमार खत्री, प्राध्यापक त्रिभुवन विश्वविद्यालय काठमाण्डौ, नेपाल द्वारा अनुवादित तथा मौलवी अताउर रहमान खालिद तथा मौलवी अब्दुल मोमिन राशिद र मौलवी मुनिर अहमद खादिम तथा मुबश्शिर अहमद बट द्वारा संशोधित वर्तमान नेपाली अनुवाद त्यस अङ्ग्रेजी अनुवादबाट गरिएको हो जुन अहमदिया मुस्लिम सम्प्रदायका वर्तमान प्रमुख, हजरत मिर्जा ताहिर अहमद, प्रतिश्रुत मसीहाका चतुर्थ उत्तराधिकारीको देखरेख तथा निर्देशनअन्तर्गत विभिन्न अहमदी विद्वानहरूको वोर्डद्वारा मूलभूत अरबी रचनाबाट सिधै अनुवाद गरिएको ( हजरत मौलवी शेर अलिको अङ्ग्रेजी अनुवादबाट पूर्णतया लाभान्वित) हो, जुन व्यक्तिहरूले नेपाली भाषा बुझ्छन् तिनीहरूका निम्ति अल्लाहले यस अनुवादलाई मार्गदर्शनको साधनस्वरूप बनाउन तथा पवित्र कुरानका अत्योत्तम सन्देश बुझ्नतर्फ तिनीहरूका हृदयद्वार खोलिदिउन् । आमिन् !

प्रकाशक

# विषय सूची

سُوْرَةُ الْفَاتِحَةِ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ سَبْعُ اٰيَاتٍ

## अल्-फातिहा
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

اَلْحَمْدُ لِلّٰهِ رَبِّ الْعٰلَمِيْنَ ②

२. सम्पूर्ण प्रशंसा विश्वब्रह्माण्डका प्रतिपालक अल्लाहका निम्ति हो ।

الرَّحْمٰنِ الرَّحِيْمِ ③

३. परम कृपालु, परम दयालु ।

مٰلِكِ يَوْمِ الدِّيْنِ ④

४. निर्णयको दिनका स्वामी ।

اِيَّاكَ نَعْبُدُ وَاِيَّاكَ نَسْتَعِيْنُ ⑤

५. हामी केवल तिम्रो नै उपासना गर्छौं, र केवल तिमीबाट नै सहायता माग्छौं ।

اِهْدِنَا الصِّرَاطَ الْمُسْتَقِيْمَ ⑥

६. हामीलाई सन्मार्गमा हिँडाऊ ।

صِرَاطَ الَّذِيْنَ اَنْعَمْتَ عَلَيْهِمْ ۙ غَيْرِ الْمَغْضُوْبِ عَلَيْهِمْ وَلَا الضَّآلِّيْنَ ⑦

७. ती व्यक्तिहरूको मार्ग (मा) जुन व्यक्तिहरूलाई तिमीले पुरस्कृत गरेका छौ, जुन व्यक्तिहरू प्रकोपित भएका छैनन् तथा जुन व्यक्तिहरू पथभ्रष्ट भएका छैनन् ।

سُوْرَةُ الْبَقَرَةِ مَدَنِيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ مِائَتَانِ سَبْعٌ وَّ ثَمَانُوْنَ اٰيَةً وَّ اَرْبَعُوْنَ رُكُوْعًا

## अल्-बकर:
## (हिजिरतपछि अवतरित)

१.परम कृपालु, परम दयालु अल्लाहको नाममा ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

२.अलिफ् लाम् मिम्* ।

الٓمٓ ②

३.यो एउटा पूर्ण पुस्तक हो, यसमा केही सन्देह छैन, यो अल्लाहसित डराउने व्यक्तिहरूका निम्ति मार्गदर्शन हो ।

ذٰلِكَ الْكِتٰبُ لَا رَيْبَ ۛ فِيْهِ ۛ هُدًى لِّلْمُتَّقِيْنَ ③

४.जसले अदृश्यप्रति विश्वास राख्छन् र नमाजको (प्रार्थनाको) अनुष्ठान गर्छन् तथा जे जति हामीले तिनीहरूलाई प्रदान गरेका छौं त्यसबाट खर्च गर्ने गर्छन् ।

الَّذِيْنَ يُؤْمِنُوْنَ بِالْغَيْبِ وَ يُقِيْمُوْنَ الصَّلٰوةَ وَمِمَّا رَزَقْنٰهُمْ يُنْفِقُوْنَ ④

५.तथा जसले त्यसप्रति विश्वास राख्छन् जुन तिमीमाथि अवतीर्ण गरिएको छ र त्यसप्रति पनि जुन तिमीभन्दा पहिले अवतीर्ण गरिएको थियो तथा भविष्यमा हुने कुराहरूप्रति पूर्ण विश्वास राख्छन् ।

وَالَّذِيْنَ يُؤْمِنُوْنَ بِمَآ اُنْزِلَ اِلَيْكَ وَمَآ اُنْزِلَ مِنْ قَبْلِكَ ۚ وَبِالْاٰخِرَةِ هُمْ يُوْقِنُوْنَ ⑤

६.तिनीहरू नै हुन् जसले आफना प्रतिपालकको मार्गदर्शन अनुसरण गर्छन् तथा तिनीहरू नै कृतार्थ हुनेछन् ।

اُولٰٓئِكَ عَلٰى هُدًى مِّنْ رَّبِّهِمْ ۗ وَاُولٰٓئِكَ هُمُ الْمُفْلِحُوْنَ ⑥

७.ती व्यक्तिहरू जसले अविश्वास प्रकट गरे तिमीले तिनीहरूलाई सावधान गर्नु अथवा सावधान नगर्नु तिनीहरूका निम्ति बराबर रहेकोछ, तिनीहरूले विश्वास गर्नेछैनन् ।

اِنَّ الَّذِيْنَ كَفَرُوْا سَوَآءٌ عَلَيْهِمْ ءَاَنْذَرْتَهُمْ اَمْ لَمْ تُنْذِرْهُمْ لَا يُؤْمِنُوْنَ ⑦

८.अल्लाहले तिनीहरूका हृदयमा र तिनीहरूका कानमा मोहर ठोकिदिएका छन् र तिनीहरूका निम्ति एउटा ठूलो दण्ड (निर्धारित) छ ।

خَتَمَ اللّٰهُ عَلٰى قُلُوْبِهِمْ وَعَلٰى سَمْعِهِمْ ۗ وَعَلٰٓى اَبْصَارِهِمْ غِشَاوَةٌ ۫ وَّلَهُمْ عَذَابٌ عَظِيْمٌ ⑧

---

* म अल्लाह सर्वज्ञानसम्पन्न हुँ ।

وَمِنَ النَّاسِ مَنْ يَّقُوْلُ اٰمَنَّا بِاللّٰهِ وَبِالْيَوْمِ الْاٰخِرِ وَمَا هُمْ بِمُؤْمِنِيْنَ ۝٩

९.तथा कतिपय मानिसहरू भन्छन्: “हामी अल्लाह र अन्तिम दिनप्रति विश्वास गर्छौं,” परन्तु तिनीहरू पटक्कै विश्वास गर्दैनन् ।

يُخٰدِعُوْنَ اللّٰهَ وَ الَّذِيْنَ اٰمَنُوْا ۚ وَمَا يَخْدَعُوْنَ اِلَّآ اَنْفُسَهُمْ وَمَا يَشْعُرُوْنَ ۝١٠

१०.तिनीहरू अल्लाह र विश्वासीहरूलाई धोका दिन खोज्छन्, तर तिनीहरूले आफूबाहेक अरू कसैलाई धोका दिँदैनन् । परन्तु तिनीहरू (यो कुरो) बुझ्दैनन् ।

فِيْ قُلُوْبِهِمْ مَّرَضٌ ۙ فَزَادَهُمُ اللّٰهُ مَرَضًا ۚ وَلَهُمْ عَذَابٌ اَلِيْمٌ ۢ ۙ بِمَا كَانُوْا يَكْذِبُوْنَ ۝١١

११.तिनीहरूको हृदयमा एउटा रोग थियो, तथा अल्लाहले तिनीहरूको रोगलाई तिनीहरूका निम्ति बढाइदिए, र तिनीहरूका निम्ति एउटा पीडादायक दण्ड छ, कारण तिनीहरू मिथ्याकुरा गर्ने गर्थे ।

وَاِذَا قِيْلَ لَهُمْ لَا تُفْسِدُوْا فِى الْاَرْضِ ۙ قَالُوْٓا اِنَّمَا نَحْنُ مُصْلِحُوْنَ ۝١٢

१२.तथा जब तिनीहरूलाई पृथ्वीमा उपद्रव नगर भनिन्छ, उनीहरू भन्छन् “हामी त केवल शान्तिका प्रवर्तक हौं ।”

اَلَآ اِنَّهُمْ هُمُ الْمُفْسِدُوْنَ وَلٰكِنْ لَّا يَشْعُرُوْنَ ۝١٣

१३.सावधान ! वास्तवमा तिनीहरू नै हुन, जसले उपद्रव गर्छन्, तर तिनीहरू (त्यो कुरो) बुझ्दैनन् ।

وَاِذَا قِيْلَ لَهُمْ اٰمِنُوْا كَمَآ اٰمَنَ النَّاسُ قَالُوْٓا اَنُؤْمِنُ كَمَآ اٰمَنَ السُّفَهَآءُ ۭ اَلَآ اِنَّهُمْ هُمُ السُّفَهَآءُ وَلٰكِنْ لَّا يَعْلَمُوْنَ ۝١٤

१४.तथा जब, तिनीहरूलाई (अन्य) मानिसहरूले विश्वास गरेझैं तिमीहरू पनि विश्वास गर भनी भनिन्छ, तिनीहरू भन्छन्, “के निर्वोधहरूले विश्वास गरेझैं हामी पनि विश्वास गरौं?” सावधान ! तिनीहरू आफै निर्वोध छन् तर तिनीहरू जान्दैनन् ।

وَاِذَا لَقُوا الَّذِيْنَ اٰمَنُوْا قَالُوْٓا اٰمَنَّا ۚ وَاِذَا خَلَوْا اِلٰى شَيٰطِيْنِهِمْ ۙ قَالُوْٓا اِنَّا مَعَكُمْ ۙ اِنَّمَا نَحْنُ مُسْتَهْزِءُوْنَ ۝١٥

१५.तथा जब विश्वासीहरूसँग तिनीहरूको भेट हुन्छ तब तिनीहरू भन्छन् “हामी विश्वास गर्छौं”, तर जब तिनीहरू आफ्ना नाइकेहरूसँग एकान्तमा हुन्छन् तब भन्छन् “वास्तवमा हामी तिमीहरूसँगै छौं, हामी त केवल ठट्टा गर्दै थियौं ।”

اَللّٰهُ يَسْتَهْزِئُ بِهِمْ وَ يَمُدُّهُمْ فِيْ

१६.अल्लाहले तिनीहरूलाई ठट्टाको दण्ड दिनेछन् तथा तिनीहरूलाई आफ्नो

طُغْيَانِهِمْ يَعْمَهُونَ ﴿١٥﴾

उल्लङ्घनीयतामा अन्धोभैँ भौंतारिन छाडि दिनेछन् ।

أُولَٰئِكَ الَّذِينَ اشْتَرَوُا الضَّلَالَةَ بِالْهُدَىٰ فَمَا رَبِحَت تِّجَارَتُهُمْ وَمَا كَانُوا مُهْتَدِينَ ﴿١٦﴾

१७.तिनीहरू नै हुन् जसले सन्मार्गको बदलामा कुपथ अवलम्बन गरे तर तिनीहरूको व्यापारले तिनीहरूलाई कुनै लाभ पुऱ्याएन, न त तिनीहरू सुपथगामी नै भए ।

مَثَلُهُمْ كَمَثَلِ الَّذِي اسْتَوْقَدَ نَارًا فَلَمَّا أَضَاءَتْ مَا حَوْلَهُ ذَهَبَ اللَّهُ بِنُورِهِمْ وَتَرَكَهُمْ فِي ظُلُمَاتٍ لَّا يُبْصِرُونَ ﴿١٧﴾

१८.तिनीहरूको अवस्था त्यस व्यक्तिको अवस्था झैं छ जसले आगो सल्कायो र जब त्यसले उसको चौतर्फी प्रकाशमय पाऱ्यो तब अल्लाहले तिनीहरूको प्रकाशलाई लगे र तिनीहरूलाई घोर अन्धकारमा छाडिदिए, तिनीहरू देख्दैनन् ।

صُمٌّ بُكْمٌ عُمْيٌ فَهُمْ لَا يَرْجِعُونَ ﴿١٨﴾

१९.तिनीहरू बहिरा, लाटा र अन्धा छन् । अतः तिनीहरू फर्कनेछैनन्* ।

أَوْ كَصَيِّبٍ مِّنَ السَّمَاءِ فِيهِ ظُلُمَاتٌ وَرَعْدٌ وَبَرْقٌ يَجْعَلُونَ أَصَابِعَهُمْ فِي آذَانِهِم مِّنَ الصَّوَاعِقِ حَذَرَ الْمَوْتِ ۚ وَاللَّهُ مُحِيطٌ بِالْكَافِرِينَ ﴿١٩﴾

२०.अथवा (तिनीहरूको अवस्था) बादल-बाट परेको त्यो मुसलधार पानीजस्तो हो जसमा घोर अन्धकार, गर्जन र बिजुली हुन्छ, तिनीहरू चटचाङ्का कारण मर्ने डरले आफ्ना औंलाहरू आफ्नै कानमा ठोस्छन्, तथा अल्लाहले अविश्वासीहरूलाई घेर्नेछन् ।

يَكَادُ الْبَرْقُ يَخْطَفُ أَبْصَارَهُمْ ۖ كُلَّمَا أَضَاءَ لَهُم مَّشَوْا فِيهِ وَإِذَا أَظْلَمَ عَلَيْهِمْ قَامُوا ۚ وَلَوْ شَاءَ اللَّهُ لَذَهَبَ بِسَمْعِهِمْ وَأَبْصَارِهِمْ ۚ إِنَّ اللَّهَ عَلَىٰ كُلِّ شَيْءٍ قَدِيرٌ ﴿٢٠﴾

२१.सम्भवतः बिजुलीले तिनीहरूको दृष्टि-शक्ति हर्नसक्छ, जब त्यसको प्रकाश तिनीहरूमाथि पर्छ तिनीहरू त्यसमा हिँड्न थाल्छन् तथा जब तिनीहरूमाथि अन्धकार छाउँछ तब ठिङ्ग उभिन्छन् र यदि अल्लाहको इच्छा रहेको भए तिनीहरूको श्रवण र दर्शनशक्ति लैजाने थिए । निश्चय नै अल्लाहमा ती सबै कार्य गर्ने शक्ति छ जसको इच्छा उनले गर्छन् ।

* उक्त आयत (पद) ती ढोंगीहरूको वर्ग विश्लेषण गर्न प्रयोग हुन्छ जसलाई तिनीहरूको सत्य नसुन्ने, सत्य नबोल्ने र सत्य नदेख्ने सङ्कल्पकै कारण बहिरा, लाटा र अन्धा भनिएको छ । अतः तिनीहरूले आफ्ना ती क्षमताहरूलाई स्वेच्छापूर्वक रोकेका छन् र तिनीहरूलाई भित्र बन्द राखेका छन् ।

२२.हे मानिस हो, तिमीहरू आफ्ना ती प्रतिपालकको उपासना गर जसले तिमीहरूलाई तथा तिमीहरूभन्दा पहिलाका मानिसहरू-लाई सृष्टि गरे, ताकि तिमीहरू पापमुक्त बन्न सक ।

يَٰٓأَيُّهَا ٱلنَّاسُ ٱعْبُدُوا۟ رَبَّكُمُ ٱلَّذِى خَلَقَكُمْ وَٱلَّذِينَ مِن قَبْلِكُمْ لَعَلَّكُمْ تَتَّقُونَ ﴿٢٢﴾

२३.जसले पृथ्वीलाई तिमीहरूका निम्ति बिछ्याउना र आकाशलाई छानुस्वरूप बनाए, तथा बादलबाट पानी बर्साए र त्यसबाट तिमीहरूको जीविकाका निम्ति विभिन्न प्रकारका फलहरू खाद्यस्वरूप उत्पन्न गरे, अत: जानीबुझीकन तिमीहरू (कसैलाई) अल्लाहतुल्य नबनाऊ

ٱلَّذِى جَعَلَ لَكُمُ ٱلْأَرْضَ فِرَٰشًا وَٱلسَّمَآءَ بِنَآءً وَأَنزَلَ مِنَ ٱلسَّمَآءِ مَآءً فَأَخْرَجَ بِهِۦ مِنَ ٱلثَّمَرَٰتِ رِزْقًا لَّكُمْ ۖ فَلَا تَجْعَلُوا۟ لِلَّهِ أَندَادًا وَأَنتُمْ تَعْلَمُونَ ﴿٢٣﴾

२४.तथा जुनकुरो हामीले हाम्रा सेवकमाथि अवतीर्ण गरेका छौं त्यसबारे तिमीहरूलाई सन्देह रहेको भए र यदि तिमीहरू सत्यवादी हौ भने त्यो जस्तै एउटा अध्याय प्रस्तुत गर तथा अल्लाहबाहेक आफ्ना सहयोगीहरूलाई आह्वान गर ।

وَإِن كُنتُمْ فِى رَيْبٍ مِّمَّا نَزَّلْنَا عَلَىٰ عَبْدِنَا فَأْتُوا۟ بِسُورَةٍ مِّن مِّثْلِهِۦ وَٱدْعُوا۟ شُهَدَآءَكُم مِّن دُونِ ٱللَّهِ إِن كُنتُمْ صَٰدِقِينَ ﴿٢٤﴾

२५.परन्तु यदि तिमीहरूले त्यसो गरेनौ भने तथा तिमीहरूले कदापि त्यसो गर्न सक्नेछैनौ– अत: त्यस आगोबाट बच जसको इन्धन मानिस र ढुङ्गाहरू हुन् जुन अविश्वासीहरूका निम्ति तयार गरिएको छ ।

فَإِن لَّمْ تَفْعَلُوا۟ وَلَن تَفْعَلُوا۟ فَٱتَّقُوا۟ ٱلنَّارَ ٱلَّتِى وَقُودُهَا ٱلنَّاسُ وَٱلْحِجَارَةُ ۖ أُعِدَّتْ لِلْكَٰفِرِينَ ﴿٢٥﴾

२६.तथा ती व्यक्तिहरूलाई शुभसमाचार देऊ जसले विश्वास स्थापना गर्छन् तथा सुकर्म गर्छन्, तिनीहरूका निम्ति यस्ता उद्यानहरू छन् जसमनि नहरहरू बगिरहेछन् । जब त्यसबाट तिनीहरूलाई खाद्यस्वरूप केही फलहरू दिइन्छ तब तिनीहरू भन्नेछन्, "यो त त्यही नै हो जुन हामीलाई पहिला दिइएको थियो", वस्तुत: मिल्दाजुल्दा वस्तुहरू तिनीहरूसमक्ष उपस्थित गरिनेछ । तथा तिनीहरूका निम्ति त्यहाँ पूर्णपवित्र जोडीहरू हुनेछन्, तथा तिनीहरू त्यहाँ

وَبَشِّرِ ٱلَّذِينَ ءَامَنُوا۟ وَعَمِلُوا۟ ٱلصَّٰلِحَٰتِ أَنَّ لَهُمْ جَنَّٰتٍ تَجْرِى مِن تَحْتِهَا ٱلْأَنْهَٰرُ ۖ كُلَّمَا رُزِقُوا۟ مِنْهَا مِن ثَمَرَةٍ رِّزْقًا ۙ قَالُوا۟ هَٰذَا ٱلَّذِى رُزِقْنَا مِن قَبْلُ ۖ وَأُتُوا۟ بِهِۦ مُتَشَٰبِهًا ۖ وَلَهُمْ فِيهَآ أَزْوَٰجٌ مُّطَهَّرَةٌ ۖ وَهُمْ فِيهَا خَٰلِدُونَ ﴿٢٦﴾

सदा बसोबास गर्नेछन् ।

إِنَّ اللّٰهَ لَا يَسْتَحْيٖٓ اَنْ يَّضْرِبَ مَثَلًا مَّا بَعُوْضَةً فَمَا فَوْقَهَا ۚ فَاَمَّا الَّذِيْنَ اٰمَنُوْا فَيَعْلَمُوْنَ اَنَّهُ الْحَقُّ مِنْ رَّبِّهِمْ ۚ وَاَمَّا الَّذِيْنَ كَفَرُوْا فَيَقُوْلُوْنَ مَاذَآ اَرَادَ اللّٰهُ بِهٰذَا مَثَلًا ۘ يُضِلُّ بِهٖ كَثِيْرًا ۙ وَّيَهْدِيْ بِهٖ كَثِيْرًا ۚ وَمَا يُضِلُّ بِهٖٓ اِلَّا الْفٰسِقِيْنَ ﴿٢٧﴾

२७.अल्लाहले मच्छर बराबर अथवा त्योभन्दा पनि कुनै सानो कुराको उपमा दिन कदापि सङ्कोच गर्दैनन् । जसले विश्वास गर्छन् तिनीहरू त्यो आफ्ना प्रतिपालकका तर्फबाट आएको एउटा सत्य हो भनी जान्दछन्, तथा ती व्यक्तिहरू जसले विश्वास गर्दैनन्, तिनीहरू के भन्छन भने "यस्तो उपमा दिनमा अल्लाहको के अभिप्राय रहेको छ? यसैद्वारा उनी कैयौलाई पथभ्रष्ट घोषित गर्छन् भने यसैद्वारा कैयौंलाई उनी सन्मार्ग देखाउछन् । तथा अवज्ञाकारीबाहेक अन्य कसैलाई उनी त्यसद्वारा पथभ्रष्ट घोषित गर्दैनन् ।

الَّذِيْنَ يَنْقُضُوْنَ عَهْدَ اللّٰهِ مِنْۢ بَعْدِ مِيْثَاقِهٖ ۠ وَيَقْطَعُوْنَ مَآ اَمَرَ اللّٰهُ بِهٖٓ اَنْ يُّوْصَلَ وَيُفْسِدُوْنَ فِي الْاَرْضِ ۚ اُولٰٓئِكَ هُمُ الْخٰسِرُوْنَ ﴿٢٨﴾

२८.जसले अल्लाहको सङ्कल्पलाई त्यसको दृढ स्थापनापछि तोड्छन् तथा जुन वस्तुलाई अल्लाहले जोड्ने आदेश दिएका छन् त्यसलाई विच्छेद गर्छन् तथा पृथ्वीमा फसाद फैलाउँछन्, तिनीहरू नै हुन् जसले हानि बेहोर्छन् ।

كَيْفَ تَكْفُرُوْنَ بِاللّٰهِ وَكُنْتُمْ اَمْوَاتًا فَاَحْيَاكُمْ ۚ ثُمَّ يُمِيْتُكُمْ ثُمَّ يُحْيِيْكُمْ ثُمَّ اِلَيْهِ تُرْجَعُوْنَ ﴿٢٩﴾

२९.तिमीहरू अल्लाहप्रति कसरी अविश्वास गर्नसक्छौ? कारण जुनबेला तिमीहरू निष्प्राण थियौ उनले तिमीहरूलाई जीवन प्रदान गरे तथा पुन: उनले तिमीहरूलाई मृत्य प्रदान गर्नेछन र पुन: जीवित गर्नेछन् । तत्पश्चात् तिमीहरूलाई उनीतर्फ फर्काएर लगिनेछ ।

هُوَ الَّذِيْ خَلَقَ لَكُمْ مَّا فِي الْاَرْضِ جَمِيْعًا ۗ ثُمَّ اسْتَوٰٓى اِلَى السَّمَآءِ فَسَوّٰىهُنَّ سَبْعَ سَمٰوٰتٍ ۚ وَهُوَ بِكُلِّ شَيْءٍ عَلِيْمٌ ﴿٣٠﴾

३०.ती उनै हुन् जसले तिमीहरूका निम्ति पृथ्वीमा रहेका सम्पुर्ण वस्तुहरू सृष्टि गरे, त्यसपछि उनी आकाशमण्डलतर्फ फर्के तथा उनले ती लोकहरूलाई सात ऊर्ध्व-लोकस्वरूप पूर्णता प्रदान गरे । तथा उनलाई सबैकुराको सम्पुर्ण ज्ञान छ ।

وَاِذْ قَالَ رَبُّكَ لِلْمَلٰٓئِكَةِ اِنِّيْ جَاعِلٌ فِي الْاَرْضِ خَلِيْفَةً ۚ قَالُوْٓا اَتَجْعَلُ

३१.तथा जब तिम्रा प्रतिपालकले फरिस्ताहरूसँग भने : "म पृथ्वीमा एक जना उत्तराधिकारी नियुक्त गर्न

लागिरहेछु", तिनीहरूले भने "के तिमी त्यहाँ यस्तो व्यक्तिको सिर्जना गर्नेछौ जसले त्यहाँको शान्तिभङ्ग गर्नेछ र रक्तपात गर्नेछ? अत: हामी त केवल प्रशंसाका साथ तिम्रै स्तुति गर्छौं र तिम्रो पवित्रताको वर्णन गर्छौं ।" उनले उत्तर दिए, "म त्यो कुरो जान्दछु जुन कुरो तिमीहरू जान्दैनौ ।"

فِيهَا مَنْ يُفْسِدُ فِيهَا وَيَسْفِكُ الدِّمَاءَ ۚ وَنَحْنُ نُسَبِّحُ بِحَمْدِكَ وَنُقَدِّسُ لَكَ ۖ قَالَ إِنِّي أَعْلَمُ مَا لَا تَعْلَمُونَ ﴿٣٠﴾

३२.तथा उनले आदमलाई सम्पूर्ण नामहरू सिकाए । त्यसपछि ती (नामहरूमा लक्षित वस्तुहरू) फरिस्ताहरूका अगाडि पेस गरी भने– "यदि तिमीहरूको कुरो ठिक हो भने मलाई यिनीहरूको नाम बताऊ ।"

وَعَلَّمَ آدَمَ الْأَسْمَاءَ كُلَّهَا ثُمَّ عَرَضَهُمْ عَلَى الْمَلَائِكَةِ فَقَالَ أَنْبِئُونِي بِأَسْمَاءِ هَٰؤُلَاءِ إِنْ كُنْتُمْ صَادِقِينَ ﴿٣١﴾

३३.उनीहरूले भने, "तिमी पवित्र छौ ! तिमीले सिकाएवाहेक हामीमा अन्य केही ज्ञान छैन, निश्चय नै तिमी सर्वज्ञ, तत्त्वज्ञ हौ ।"

قَالُوا سُبْحَانَكَ لَا عِلْمَ لَنَا إِلَّا مَا عَلَّمْتَنَا ۖ إِنَّكَ أَنْتَ الْعَلِيمُ الْحَكِيمُ ﴿٣٢﴾

३४.उनले भने, "हे आदम, यिनीहरूलाई तिनीहरूको नाम बताइदेउ;" तथा जब उनले उनीहरूलाई तिनीहरूको नाम बताए, उनले भने: "के मैले तिमीहरूलाई म आकाशमण्डल र पृथ्वीको भेद जान्दछु तथा जुनकुरो तिमीहरू प्रकट गर्छौ र जुनकुरो तिमीहरू गुप्त राख्ने गर्छौ, (त्यो पनि) जान्दछु भनी भनेको थिइँन र?"

قَالَ يَا آدَمُ أَنْبِئْهُمْ بِأَسْمَائِهِمْ ۖ فَلَمَّا أَنْبَأَهُمْ بِأَسْمَائِهِمْ قَالَ أَلَمْ أَقُلْ لَكُمْ إِنِّي أَعْلَمُ غَيْبَ السَّمَاوَاتِ وَالْأَرْضِ وَأَعْلَمُ مَا تُبْدُونَ وَمَا كُنْتُمْ تَكْتُمُونَ ﴿٣٣﴾

३५.तथा (त्यस समयको स्मरण गर) जब हामीले फरिस्ता(फरिस्ता) हरूलाई भनेका थियौं; "तिमीहरू आदमको आज्ञापालन गर," तब इब्लिसलेबाहेक तिनीहरू सबैले आज्ञापालन गरे । उसले अस्वीकार गऱ्यो र अहंकारपूर्ण व्यवहार गऱ्यो, तथा त्यो अविश्वासीहरूमध्ये -एक) थियो ।

وَإِذْ قُلْنَا لِلْمَلَائِكَةِ اسْجُدُوا لِآدَمَ فَسَجَدُوا إِلَّا إِبْلِيسَ أَبَىٰ وَاسْتَكْبَرَ وَكَانَ مِنَ الْكَافِرِينَ ﴿٣٤﴾

३६.तथा हामीले भन्यौं; "हे आदम ! तिमी र तिम्री पत्नी उद्यानमा बसोबास गर, तथा त्यसभित्र जहाँबाट इच्छा लाग्छ

وَقُلْنَا يَا آدَمُ اسْكُنْ أَنْتَ وَزَوْجُكَ الْجَنَّةَ وَكُلَا مِنْهَا رَغَدًا حَيْثُ شِئْتُمَا

وَلَا تَقْرَبَا هٰذِهِ الشَّجَرَةَ فَتَكُوْنَا مِنَ الظّٰلِمِيْنَ ﴿٣٥﴾

मनग्य खाऊ, तर त्यस वृक्षको छेउमा नजानू, अन्यथा तिमीहरू दुबै अन्यायकारी-हरूमध्ये हुनेछौं ।"

فَاَزَلَّهُمَا الشَّيْطٰنُ عَنْهَا فَاَخْرَجَهُمَا مِمَّا كَانَا فِيْهِ ۖ وَقُلْنَا اهْبِطُوْا بَعْضُكُمْ لِبَعْضٍ عَدُوٌّ ۚ وَلَكُمْ فِي الْاَرْضِ مُسْتَقَرٌّ وَّمَتَاعٌ اِلٰى حِيْنٍ ﴿٣٦﴾

३७.तर सैतानले तिनीहरू दुबैलाई त्यसद्वारा विचलित गऱ्यो तथा जुन अवस्थामा तिनीहरू थिए त्यसबाट बाहिर निकाल्यो । तब हामीले भन्यौं; "तिमीहरू निस्केर जाऊ, तिमीहरूमध्ये केही अन्य केहीका शत्रु छौ तथा तिमीहरूका निम्ति एउटा (निर्धारित) समयसम्मका लागि यसै पृथ्वीमा निवास र जीविकाको साधन रहेको छ ।"

فَتَلَقّٰۤى اٰدَمُ مِنْ رَّبِّهٖ كَلِمٰتٍ فَتَابَ عَلَيْهِ ۗ اِنَّهٗ هُوَ التَّوَّابُ الرَّحِيْمُ ﴿٣٧﴾

३८.तब आदमले आफ्ना प्रतिपालकबाट केही (प्रार्थनाका) शब्दहरू सिके । अतः उनले कृपाका साथ उनीतर्फ दृष्टि गरे । निश्चय नै उनी बारम्बार कृपादृष्टि गर्ने, (तथा) परम दयालु छन् ।

قُلْنَا اهْبِطُوْا مِنْهَا جَمِيْعًا ۚ فَاِمَّا يَاْتِيَنَّكُمْ مِّنِّيْ هُدًى فَمَنْ تَبِعَ هُدَايَ فَلَا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُوْنَ ﴿٣٨﴾

३९.हामीले भन्यौं; "तिमीहरू सबै यहाँबाट निस्केर जाऊ" र जब मेरो तर्फबाट तिमीहरूकहाँ कुनै मार्गदर्शन आउनेछ, तब जुन व्यक्तिहरूले मेरो मार्गदर्शनको अनुसरण गर्नेछन् तिनीहरूलाई न त कुनै प्रकारको भय हुनेछ न तिनीहरू शोकग्रस्त हुनेछन् ।

وَالَّذِيْنَ كَفَرُوْا وَكَذَّبُوْا بِاٰيٰتِنَاۤ اُولٰۤئِكَ اَصْحٰبُ النَّارِ ۚ هُمْ فِيْهَا خٰلِدُوْنَ ﴿٣٩﴾

४०.परन्तु ती व्यक्तिहरू जसले अविश्वास गर्नेछन् तथा हाम्रा चिह्नहरूप्रति मिथ्या स्वरूप व्यवहार गर्नेछन्, तिनीहरू अग्निवासी हुनेछन् र त्यसमा नै सधैं बसोबास गर्नेछन् ।

يٰبَنِيْۤ اِسْرَآءِيْلَ اذْكُرُوْا نِعْمَتِيَ الَّتِيْۤ اَنْعَمْتُ عَلَيْكُمْ وَاَوْفُوْا بِعَهْدِيْۤ اُوْفِ بِعَهْدِكُمْ ۚ وَاِيَّايَ فَارْهَبُوْنِ ﴿٤٠﴾

४१.हे इजरायलका सन्तान हो ! त्यस अनुग्रहलाई स्मरण गर जुन मैले तिमीहरू प्रति गरेको थिएँ, तथा तिमीहरूले मसँग जुन अङ्गीकार गरेका थियौ त्यसलाई पुरा गर तब म पनि तिमीहरूसँग गरेको त्यस अङ्गीकार-लाई पूरा गर्नेछु, तथा तिमीहरू केवल मसित डराऊ ।

وَاٰمِنُوْا بِمَآ اَنْزَلْتُ مُصَدِّقًا لِّمَا مَعَكُمْ وَلَا تَكُوْنُوْٓا اَوَّلَ كَافِرٍۢ بِهٖ ۖ وَلَا تَشْتَرُوْا بِاٰيٰتِيْ ثَمَنًا قَلِيْلًا ۫ وَّاِيَّايَ فَاتَّقُوْنِ ﴿٤١﴾

४२.तथा मैले अवतीर्ण गरेको त्यस कुराप्रति जसले तिमीहरूसँग रहेको कुरालाई सत्य प्रमाणित गर्छ, विश्वास गर तथा तिमीहरू त्यसप्रति पहिला अविश्वास गर्ने व्यक्तिहरू नबन तथा मेरा चिह्नहरू थोरै मूल्यसट्टा विनिमय नगर तथा केवल मेरो शरण लेऊ ।

وَلَا تَلْبِسُوا الْحَقَّ بِالْبَاطِلِ وَتَكْتُمُوا الْحَقَّ وَاَنْتُمْ تَعْلَمُوْنَ ﴿٤٢﴾

४३.तथा जानीबुझीकन सत्यलाई असत्य-सँग नमिलाऊ र सत्यलाई नलुकाऊ ।

وَاَقِيْمُوا الصَّلٰوةَ وَاٰتُوا الزَّكٰوةَ وَارْكَعُوْا مَعَ الرّٰكِعِيْنَ ﴿٤٣﴾

४४.तथा नमाजको अनुष्ठान गर, र जगात बुझाउने गर, तथा ती व्यक्तिहरूसँग मिलेर झुक्ने गर जुन व्यक्तिहरू झुक्छन् ।

اَتَاْمُرُوْنَ النَّاسَ بِالْبِرِّ وَتَنْسَوْنَ اَنْفُسَكُمْ وَاَنْتُمْ تَتْلُوْنَ الْكِتٰبَ ۭ اَفَلَا تَعْقِلُوْنَ ﴿٤٤﴾

४५.के तिमीहरू अरूलाई पुण्यकार्य गर भन्छौ तर आफुलाई चाहिँ बिर्सन्छौ तर किताब भने तिमीहरू पढ्छौ? त्यसो भए के तिमीहरू यो कुरा बुझ्दैनौ?

وَاسْتَعِيْنُوْا بِالصَّبْرِ وَالصَّلٰوةِ ۭ وَاِنَّهَا لَكَبِيْرَةٌ اِلَّا عَلَى الْخٰشِعِيْنَ ﴿٤٥﴾

४६.तथा धैर्य र प्रार्थनाका साथ सहायता माग, तर वास्तवमा यो कार्य विनम्र व्यक्तिहरूबाहेक अरूका निम्ति अति कठिन छ ।

الَّذِيْنَ يَظُنُّوْنَ اَنَّهُمْ مُّلٰقُوْا رَبِّهِمْ وَاَنَّهُمْ اِلَيْهِ رٰجِعُوْنَ ﴿٤٦﴾

४७.जसले -विनम्रहरूले) आफ्ना प्रतिपालकसँग तिनीहरूको साक्षातकार हुनेछ र उनीतर्फ तिनीहरू फर्केर जानेछन् भनी निश्चय-पूर्वक जान्दछन् ।

يٰبَنِيْٓ اِسْرَاۗءِيْلَ اذْكُرُوْا نِعْمَتِيَ الَّتِيْٓ اَنْعَمْتُ عَلَيْكُمْ وَاَنِّيْ فَضَّلْتُكُمْ عَلَى الْعٰلَمِيْنَ ﴿٤٧﴾

४८.हे इजरायलका सन्तान हो ! जुन अनुग्रह मैले तिमीहरूप्रति गरेको थिएँ, र तिमीहरूलाई सम्पूर्ण जातिहरूमाथि प्राधान्यता प्रदान गरेको थिएँ, त्यसलाई स्मरण गर ।

وَاتَّقُوْا يَوْمًا لَّا تَجْزِيْ نَفْسٌ عَنْ نَّفْسٍ شَيْـــًٔا وَّلَا يُقْبَلُ مِنْهَا شَفَاعَةٌ وَّلَا يُؤْخَذُ مِنْهَا عَدْلٌ وَّلَا هُمْ يُنْصَرُوْنَ ﴿٤٨﴾

४९.तथा त्यस दिनसित डराऊ जुनदिन एक आत्मा अर्को आत्माको सट्टा-भर्ना बन्नसक्नेछैन, तथा उसका निम्ति न कुनै सिफारिस ग्रहण गरिनेछ, तथा न उसबाट कुनै प्रकारको क्षतिपूर्ति स्वीकार गरिनेछ, तथा न त उनीहरूलाई कुनै प्रकारको

सहयोग प्राप्त हुनेछ ।

५०.तथा (त्यस समयको स्मरण गर) जब हामीले तिमीहरूलाई घोर यातनाका साथ उत्पीडन दिइरहेका फिरौन*का मानिस-हरूबाट मुक्ति प्रदान गरेका थियौं तिनीहरूले तिमीहरूका पुत्रहरूको हत्या गर्थे र तिमीहरूका महिलाहरूलाई जीवित राख्थे । तथा यसमा तिमीहरूका प्रतिपालकका तर्फबाट तिमीहरूका निम्ति एउटा ठुलो परीक्षा थियो ।

وَإِذْ نَجَّيْنَٰكُم مِّنْ ءَالِ فِرْعَوْنَ يَسُومُونَكُمْ سُوٓءَ ٱلْعَذَابِ يُذَبِّحُونَ أَبْنَآءَكُمْ وَيَسْتَحْيُونَ نِسَآءَكُمْ ۚ وَفِى ذَٰلِكُم بَلَآءٌ مِّن رَّبِّكُمْ عَظِيمٌ ﴿٥٠﴾

५१.तथा (त्यस समयको स्मरण गर) जब हामीले तिमीहरूका निम्ति समुद्रलाई चिरी तिमीहरूको रक्षा गऱ्यौं र तिमीहरूका आँखाका सामुन्ने फिरौनका मानिसहरूलाई डुबायौं ।

وَإِذْ فَرَقْنَا بِكُمُ ٱلْبَحْرَ فَأَنجَيْنَٰكُمْ وَأَغْرَقْنَآ ءَالَ فِرْعَوْنَ وَأَنتُمْ تَنظُرُونَ ﴿٥١﴾

५२.तथा (त्यस समयको स्मरण गर) जब हामीले मूसासँग चालीस रात्रिको वचन लिएका थियौं, त्यसपछि उनको अनुपस्थितिमा तिमीहरूले अत्याचारी बनी बाछोलाई आफ्नो (उपास्य) बनायौ ।

وَإِذْ وَعَدْنَا مُوسَىٰٓ أَرْبَعِينَ لَيْلَةً ثُمَّ ٱتَّخَذْتُمُ ٱلْعِجْلَ مِنۢ بَعْدِهِۦ وَأَنتُمْ ظَٰلِمُونَ ﴿٥٢﴾

५३.पुनः त्यसपछि हामीले तिमीहरूलाई क्षमा गरिदियौं, ताकि तिमीहरू कृतज्ञ बन ।

ثُمَّ عَفَوْنَا عَنكُم مِّنۢ بَعْدِ ذَٰلِكَ لَعَلَّكُمْ تَشْكُرُونَ ﴿٥٣﴾

५४.तथा (त्यस समयको स्मरण गर) जब हामीले मूसालाई किताब र भेदज्ञान प्रदान गऱ्यौं, ताकि तिमीहरू सुपथगामी होऊ ।

وَإِذْ ءَاتَيْنَا مُوسَى ٱلْكِتَٰبَ وَٱلْفُرْقَانَ لَعَلَّكُمْ تَهْتَدُونَ ﴿٥٤﴾

५५.तथा त्यस समयको स्मरण गर जब मूसाले आफ्ना मानिसहरूलाई भने, "हे मेरा मानिस हो ! तिमीहरूले बाच्छोलाई (उपासनाको लागि) स्वीकार गरेर आफैमाथि अत्याचार गरेका छौ, त्यसकारण तिमीहरू आफ्ना सृष्टिकर्तातर्फ फर्क, तथा आफ्नै

وَإِذْ قَالَ مُوسَىٰ لِقَوْمِهِۦ يَٰقَوْمِ إِنَّكُمْ ظَلَمْتُمْ أَنفُسَكُم بِٱتِّخَاذِكُمُ ٱلْعِجْلَ فَتُوبُوٓا۟ إِلَىٰ بَارِئِكُمْ فَٱقْتُلُوٓا۟ أَنفُسَكُمْ ذَٰلِكُمْ خَيْرٌ لَّكُمْ عِندَ بَارِئِكُمْ فَتَابَ عَلَيْكُمْ ۚ إِنَّهُۥ هُوَ ٱلتَّوَّابُ ٱلرَّحِيمُ ﴿٥٥﴾

* प्राचीनकालका मिश्रका सम्राटहरूको उपाधि

मानिसहरूको हत्या गर*, यो कार्य तमीहरूका सृष्टिकर्ताका दृष्टिमा तिमीहरूका निम्ति उत्तम रहेको छ ।" तब उनले तिमीहरूतर्फ पुनः कृपादृष्टि गरे । निश्चय नै उनी बारम्बार कृपादृष्टिकर्ता, (तथा) अति दयावान छन्

وَإِذْ قُلْتُمْ يَٰمُوسَىٰ لَن نُّؤْمِنَ لَكَ حَتَّىٰ نَرَى ٱللَّهَ جَهْرَةً فَأَخَذَتْكُمُ ٱلصَّٰعِقَةُ وَأَنتُمْ تَنظُرُونَ ﴿٥٥﴾

५६.तथा (स्मरण गर) जब तिमीहरूले भनेका थियौं; "हे मूसा, जबसम्म हामी अल्लाहलाई हाम्रा सामुन्ने देख्नेछैनौं तबसम्म तिमीप्रति कदापि विश्वास गर्नेछैनौं," तब तिमीहरूले हेर्दा हेर्दै तिमीहरूमाथि बज्रपात भयो ।

ثُمَّ بَعَثْنَٰكُم مِّنۢ بَعْدِ مَوْتِكُمْ لَعَلَّكُمْ تَشْكُرُونَ ﴿٥٦﴾

५७.तब हामीले तिमीहरूको अवसानपश्चात् पुनः तिमीहरूको उत्थान गऱ्यौ, ताकि तिमीहरू कृतज्ञ बन ।

وَظَلَّلْنَا عَلَيْكُمُ ٱلْغَمَامَ وَأَنزَلْنَا عَلَيْكُمُ ٱلْمَنَّ وَٱلسَّلْوَىٰ ۖ كُلُوا۟ مِن طَيِّبَٰتِ مَا رَزَقْنَٰكُمْ ۖ وَمَا ظَلَمُونَا وَلَٰكِن كَانُوٓا۟ أَنفُسَهُمْ يَظْلِمُونَ ﴿٥٧﴾

५८.तथा हामीले तिमीहरूका निम्ति बादललाई छायास्वरूप बनायौं तथा यसो भन्दै तिमीहरूका निम्ति मन्न र सल्वा पठायौं, यसो भन्दै "हामीले प्रदान गरेका पवित्र वस्तुहरूबाट खाऊ ।" तथा तिनीहरूले हाम्रो केही अनिष्ठ गरेनन् बरु आफ्नै अनिष्ट गरे ।

وَإِذْ قُلْنَا ٱدْخُلُوا۟ هَٰذِهِ ٱلْقَرْيَةَ فَكُلُوا۟ مِنْهَا حَيْثُ شِئْتُمْ رَغَدًا وَٱدْخُلُوا۟ ٱلْبَابَ سُجَّدًا وَقُولُوا۟ حِطَّةٌ نَّغْفِرْ لَكُمْ خَطَٰيَٰكُمْ ۚ وَسَنَزِيدُ ٱلْمُحْسِنِينَ ﴿٥٨﴾

५९.तथा (त्यस समयको स्मरण गर) जब हामीले भन्यौं; "त्यस गाउँमा प्रवेश गर तथा त्यहाँ गई जहाँबाट मनलाग्छ मनग्य खाऊ तथा आज्ञाकारीताका साथ ढोकाबाट प्रवेश गर, साथै "(हे अल्लाह) ! हाम्रो पाप क्षमा गर" भन्दै जाऊ, हामी तिमीहरूको पाप क्षमा गर्नेछौं तथा हामी सुकर्मीहरूलाई अवश्य पर्याप्तता प्रदान गर्नेछौं ।

فَبَدَّلَ ٱلَّذِينَ ظَلَمُوا۟ قَوْلًا غَيْرَ

६०.ती उल्लङ्घनकारीहरूले तिनीहरूलाई भनिएको त्यस कुरोको स्थानमा अर्को कुरो साटिदिए, त्यसकारण हामीले ती

* आफ्ना मनका कु-अभिलाषाहरूलाई त्याग ।

الَّذِي قِيلَ لَهُمْ فَأَنزَلْنَا عَلَى الَّذِينَ ظَلَمُوا رِجْزًا مِّنَ السَّمَاءِ بِمَا كَانُوا يَفْسُقُونَ ﴿٦٠﴾

अत्याचारीहरूमाथि तिनीहरूको उल्लङ्घनीयताका कारण आकाशबाट एउटा दण्ड पठायौं ।

وَإِذِ اسْتَسْقَىٰ مُوسَىٰ لِقَوْمِهِ فَقُلْنَا اضْرِب بِّعَصَاكَ الْحَجَرَ ۖ فَانفَجَرَتْ مِنْهُ اثْنَتَا عَشْرَةَ عَيْنًا ۖ قَدْ عَلِمَ كُلُّ أُنَاسٍ مَّشْرَبَهُمْ ۖ كُلُوا وَاشْرَبُوا مِن رِّزْقِ اللَّهِ وَلَا تَعْثَوْا فِي الْأَرْضِ مُفْسِدِينَ ﴿٦١﴾

६१.तथा (त्यस समयको स्मरण गर) जब मूसाले आफ्ना मानिसहरूका निम्ति पानी प्राप्तिका लागि प्रार्थना गरे, तब हामीले भन्यौं; "आफ्नो लट्ठीले (फलानो) ढुङ्गामाथि प्रहार गर", तब त्यसबाट पानीका बाह्रवटा मूल फुटे । अतः प्रत्येक समूहले आ-आफ्नो पानीघाट चिने । "अल्लाहले प्रदान गरेको खाद्यान्नबाट खाऊ, पिऊ तथा उपद्रवी बनी पृथ्वीमा अशान्ति उत्पन्न नगर ।

وَإِذْ قُلْتُمْ يَا مُوسَىٰ لَن نَّصْبِرَ عَلَىٰ طَعَامٍ وَاحِدٍ فَادْعُ لَنَا رَبَّكَ يُخْرِجْ لَنَا مِمَّا تُنبِتُ الْأَرْضُ مِن بَقْلِهَا وَقِثَّائِهَا وَفُومِهَا وَعَدَسِهَا وَبَصَلِهَا ۖ قَالَ أَتَسْتَبْدِلُونَ الَّذِي هُوَ أَدْنَىٰ بِالَّذِي هُوَ خَيْرٌ ۚ اهْبِطُوا مِصْرًا فَإِنَّ لَكُم مَّا سَأَلْتُمْ ۗ وَضُرِبَتْ عَلَيْهِمُ الذِّلَّةُ وَالْمَسْكَنَةُ وَبَاءُوا بِغَضَبٍ مِّنَ اللَّهِ ۗ ذَٰلِكَ بِأَنَّهُمْ كَانُوا يَكْفُرُونَ بِآيَاتِ اللَّهِ وَيَقْتُلُونَ النَّبِيِّينَ بِغَيْرِ الْحَقِّ ۗ ذَٰلِكَ بِمَا عَصَوا وَّكَانُوا يَعْتَدُونَ ﴿٦٢﴾

६२.तथा (त्यस समयको स्मरण गर) जब तिमीहरूले भनेका थियौः "हे मूसा, निश्चय नै हामी केवल एक प्रकारको खाद्यमा मात्र सन्तुष्ट रहन सक्दैनौं, त्यसकारण हाम्रो निम्ति तिमी आफ्ना प्रतिपालकसँग प्रार्थना गर ताकि उनले हाम्रा निम्ति यस्ता वस्तुहरू उत्पन्न गरुन् जसलाई पृथ्वीले उमार्छ– जस्तै सागपात, काँक्रो, गहुँ, मुसुरी दाल तथा प्याज ।" उनले भने: "के तिमीहरू त्यस उत्कृष्ट वस्तुको सट्टा त्यो वस्तु लिन चाहन्छौ जुन वस्तु निकृष्ट छ? कुनै एउटा शहरमा जाऊ, त्यहाँ तिमीहरूलाई तिमीहरूले जे मागेका छौ त्यो प्राप्त हुनेछ ।" तथा तिनीहरूमाथि सदाका निम्ति तिरस्कार र दरिद्रताको मार पर्‍यो, तथा तिनीहरू अल्लाहका कोपभाजन बने, कारण तिनीहरू अल्लाहका चिह्नहरूका अस्वीकारी थिए तथा अन्यायपूर्वक नबीहरूको (सिद्धपुरुषहरूको) हत्या गर्थे । यो अवस्था तिनीहरूले गरेको अवज्ञा र उल्लङ्घनीयताका कारण उत्पन्न भएको थियो ।

إِنَّ الَّذِينَ آمَنُوا وَالَّذِينَ هَادُوا وَ

६३.निश्चय नै, ती व्यक्तिहरू जसले विश्वास स्थापना गरे, तथा यहूदीहरू,

النَّصٰرٰى وَالصّٰبِـِٕيْنَ مَنْ اٰمَنَ بِاللّٰهِ وَ الْيَوْمِ الْاٰخِرِ وَعَمِلَ صَالِحًا فَلَهُمْ اَجْرُهُمْ عِنْدَ رَبِّهِمْ ۚ وَلَا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُوْنَ ﴿٦٢﴾

इसाईहरू र साबीहरूमध्ये जसले अल्लाह र अन्तिम दिनप्रति (वास्तविक) आस्था राखी पुण्यकार्य गरेका छन्, तिनीहरूका निम्ति तिनीहरूका प्रतिपालककहाँ पारितोषिक छ, तथा तिनीहरूलाई कुनै प्रकारको डर हुनेछैन, न त तिनीहरू शोकाकुल नै हुनेछन् ।

وَاِذْ اَخَذْنَا مِيْثَاقَكُمْ وَرَفَعْنَا فَوْقَكُمُ الطُّوْرَ ؕ خُذُوْا مَآ اٰتَيْنٰكُمْ بِقُوَّةٍ وَّ اذْكُرُوْا مَا فِيْهِ لَعَلَّكُمْ تَتَّقُوْنَ ﴿٦٣﴾

६४.तथा (त्यस समयको स्मरण गर) जब हामीले तिमीहरूबाट अङगीकार लिएका थियौं र (के भन्दै) तूर (पर्वत)लाई तिमीहरूका सामुन्ने खडा गरेका थियौं (भने)- "जुन कुरो हामीले तिमीहरूलाई प्रदान गरेका छौं त्यसलाई दृढतापूर्वक अंगाल तथा त्यसमा जे छ त्यसलाई मनमा राख, ताकि तिमीहरू सुरक्षित रहन सक ।

ثُمَّ تَوَلَّيْتُمْ مِّنْۢ بَعْدِ ذٰلِكَ ۚ فَلَوْلَا فَضْلُ اللّٰهِ عَلَيْكُمْ وَرَحْمَتُهٗ لَكُنْتُمْ مِّنَ الْخٰسِرِيْنَ ﴿٦٤﴾

६५.त्यसपछि पुन: तिमीहरूले पिठ्यूँ देखायौ तथा यदि तिमीहरूप्रति अल्लाहको कृपा र करुणा नरहेको भए निश्चय नै तिमीहरू घाटा खाने व्यक्तिहरूमध्ये हुने थियौ ।

وَلَقَدْ عَلِمْتُمُ الَّذِيْنَ اعْتَدَوْا مِنْكُمْ فِي السَّبْتِ فَقُلْنَا لَهُمْ كُوْنُوْا قِرَدَةً خٰسِـِٕيْنَ ﴿٦٥﴾

६६.तथा निश्चय नै तिमीहरूमध्ये जसले सबतका मामिलामा आज्ञा उल्लङ्घन गरेका थियौ तिमीहरूलाई तिनीहरूको (परिणाम) अवश्य ज्ञात छ । यसै कारण हामीले तिनीहरूलाई "तिरस्कृत बाँदर भएस्" भनी भनेका थियौं ।

فَجَعَلْنٰهَا نَكَالًا لِّمَا بَيْنَ يَدَيْهَا وَمَا خَلْفَهَا وَمَوْعِظَةً لِّلْمُتَّقِيْنَ ﴿٦٦﴾

६७.अत: हामीले त्यस घटनालाई समसामयिक व्यक्तिहरूका निम्ति तथा परवर्ती व्यक्तिहरूका निम्ति पनि एउटा दृष्टान्तस्वरूप र धार्मिक व्यक्तिहरूका निम्ति एउटा उपदेशस्वरूप बनायौं ।

وَاِذْ قَالَ مُوْسٰى لِقَوْمِهٖٓ اِنَّ اللّٰهَ يَاْمُرُكُمْ اَنْ تَذْبَحُوْا بَقَرَةً ۗ قَالُوْٓا اَتَتَّخِذُنَا هُزُوًا ۗ قَالَ اَعُوْذُ بِاللّٰهِ اَنْ

६८.तथा (स्मरण गर) जब मूसाले आफ्ना मानिसहरूलाई भने: "अल्लाहले तिमीहरू-लाई एउटा गोबध गर्ने आदेश दिएका छन्" । तिनीहरूले भने: "के तिमी हामीसँग ठट्टा गरिरहेछौ?" उनले भने :

أَكُونَ مِنَ الْجَاهِلِينَ ﴿٦٧﴾

"म अनभिज्ञहरूमा सामेल हुनबाट बच्नका निम्ति अल्लाहको शरण चाहन्छु ।

قَالُوا ادْعُ لَنَا رَبَّكَ يُبَيِّن لَّنَا مَا هِيَ ۚ
قَالَ إِنَّهُ يَقُولُ إِنَّهَا بَقَرَةٌ لَّا فَارِضٌ
وَلَا بِكْرٌ عَوَانٌ بَيْنَ ذَٰلِكَ ۖ فَافْعَلُوا
مَا تُؤْمَرُونَ ﴿٦٨﴾

६९.तिनीहरूले भने: "हाम्रा निम्ति आफ्ना प्रतिपालकसँग के प्रार्थन गर भने, त्यो गाई कस्तो छ उनले हामीलाई स्पष्टरूपमा भनून् ।" उनले उत्तर दिए: "(अल्लाह) भन्छन्, त्यो गाई न त बूढी छ न बाछी, (अपितु) दुबैबीचको पूर्णजवान छ । त्यसकारण तिमीहरूलाई जुन आदेश दिइएको छ त्यसको पालना गर ।"

قَالُوا ادْعُ لَنَا رَبَّكَ يُبَيِّن لَّنَا مَا لَوْنُهَا ۚ
قَالَ إِنَّهُ يَقُولُ إِنَّهَا بَقَرَةٌ صَفْرَاءُ فَاقِعٌ
لَّوْنُهَا تَسُرُّ النَّاظِرِينَ ﴿٦٩﴾

७०.उनीहरूले भने: "हाम्रा निम्ति आफ्ना प्रतिपालकसँग के प्रार्थना गर भने, त्यसको रङ्ग कस्तो छ उनले हामीलाई स्पष्ट रूपमा भनून् ।" उनले उत्तर दिए: "(अल्लाह) भन्छन्, त्यो गाई पहेंलो वर्णको छ, उज्वल सुवर्णताका कारण दर्शकहरूलाई मोहित पार्छ ।"

قَالُوا ادْعُ لَنَا رَبَّكَ يُبَيِّن لَّنَا مَا هِيَ
إِنَّ الْبَقَرَ تَشَابَهَ عَلَيْنَا وَإِنَّا إِن شَاءَ
اللَّهُ لَمُهْتَدُونَ ﴿٧٠﴾

७१.उनीहरूले भने: "हाम्रा निम्ति आफ्ना प्रतिपालकसँग के प्रार्थना गर भने, त्यो कुन प्रकारको छ, उनले हामीलाई स्पष्ट रूपमा भनून्, हाम्रा दृष्टिमा त सबै (त्यस्ता) गाईहरू एकैनासे छन् र यदि आल्लाहको इच्छा भएमा निश्चय नै हामीलाई मार्गदर्शन प्राप्त हुनेछ ।

قَالَ إِنَّهُ يَقُولُ إِنَّهَا بَقَرَةٌ لَّا ذَلُولٌ
تُثِيرُ الْأَرْضَ وَلَا تَسْقِي الْحَرْثَ
مُسَلَّمَةٌ لَّا شِيَةَ فِيهَا ۚ قَالُوا الْآنَ
جِئْتَ بِالْحَقِّ ۚ فَذَبَحُوهَا وَمَا كَادُوا
يَفْعَلُونَ ﴿٧١﴾

ع ٨

७२.उनले उत्तर दिए: "(अल्लाह) भन्छन् त्यो गाई यस्तो छ जसलाई न त हलो जोत्नका निम्ति, न खेतीमा पानी लगाउनका निम्ति जुवामा नारिएको छ, त्यो पूर्णाङ्ग छ, त्यसमा कुनै दाग छैन ।" उनीहरूले भने: "अब भने तिमीले सत्य प्रकट गऱ्यौ ।" तब तिनीहरूले त्यो गाई बध गरे, यध्यपि तिनीहरू त्यस कार्य प्रति इच्छुक थिएनन् ।

وَإِذْ قَتَلْتُمْ نَفْسًا فَادَّارَأْتُمْ فِيهَا ۖ وَ
اللَّهُ مُخْرِجٌ مَّا كُنتُمْ تَكْتُمُونَ ﴿٧٢﴾

७३.तथा (त्यस समयको स्मरण गर) जब तिमीहरूले एउटा व्यक्तिको हत्या गऱ्यौ, तथा त्यसबारे परस्पर विवाद गऱ्यौ, तथा

तिमीहरूले जुनकुरो लुकाएका थियौ त्यसलाई अल्लाहले प्रकट गर्ने नै थिए ।

فَقُلْنَا اضْرِبُوْهُ بِبَعْضِهَا ۚ كَذٰلِكَ يُحْيِ اللّٰهُ الْمَوْتٰى ۙ وَ يُرِيْكُمْ اٰيٰتِهٖ لَعَلَّكُمْ تَعْقِلُوْنَ ﴿٧٣﴾

७४.त्यसपछि हामीले के भन्यौ भने- "त्यसलाई (हत्यारालाई) उसमाथि (हताहत व्यक्तिमाथि) गरेको अपराधको एकांश बदलास्वरूप हिर्काऊ ।" यसै प्रकार अल्लाह मृतहरूलाई जीवित गर्छन् तथा तिमीहरूलाई आफ्ना चिह्नहरू देखाउँछन्, ताकि तिमीहरू बुझ्न सक ।

ثُمَّ قَسَتْ قُلُوْبُكُمْ مِّنْۢ بَعْدِ ذٰلِكَ فَهِيَ كَالْحِجَارَةِ اَوْ اَشَدُّ قَسْوَةً ۚ وَ اِنَّ مِنَ الْحِجَارَةِ لَمَا يَتَفَجَّرُ مِنْهُ الْاَنْهٰرُ ۚ وَ اِنَّ مِنْهَا لَمَا يَشَّقَّقُ فَيَخْرُجُ مِنْهُ الْمَآءُ ۚ وَ اِنَّ مِنْهَا لَمَا يَهْبِطُ مِنْ خَشْيَةِ اللّٰهِ ۚ وَ مَا اللّٰهُ بِغَافِلٍ عَمَّا تَعْمَلُوْنَ ﴿٧٤﴾

७५.त्यसपछि पुन: तिमीहरूको हृदय यति कठोर हुन गयो, मानौं त्यो ढुङ्गाझैं कठोर अथवा अझ कठोर भयो, किनभने ढुङ्गाहरूमध्ये त कतिपय यस्ता ढुङ्गा पनि अवश्य हुन्छन् जसबाट खोलाहरू बग्ने गर्छन्, र तीमध्ये कतिपय यस्ता पनि हुन्छन् जुन फुट्नासाथ त्यसबाट पानी निस्कने
गर्छ । तथा तीमध्ये कतिपय निश्चय नै यस्ता पनि हुन्छन् जुन अल्लाहको डरले गर्दा कोमल हुन्छन् । तथा जुन कार्य तिमीहरू गरिरहेका छौ त्यसप्रति अल्लाह अनभिज्ञ छैनन् ।

اَفَتَطْمَعُوْنَ اَنْ يُّؤْمِنُوْا لَكُمْ وَ قَدْ كَانَ فَرِيْقٌ مِّنْهُمْ يَسْمَعُوْنَ كَلٰمَ اللّٰهِ ثُمَّ يُحَرِّفُوْنَهٗ مِنْۢ بَعْدِ مَا عَقَلُوْهُ وَ هُمْ يَعْلَمُوْنَ ﴿٧٥﴾

७६.जब तिनीहरूमध्ये कतिपय यस्ता व्यक्तिहरू (पनि) छन् जसले अल्लाहको वाणीलाई सुनेपश्चात् र त्यसलाई बुझे पश्चात् तथा त्यसलाई राम्ररी जानेपश्चात् जानी बुझीकन त्यसलाई परिवर्तन गर्ने गर्छन् तथा तिनीहरू (त्यस कार्यको परिणाम पनि) जान्दछन् भने, तिनीहरूले तिमीहरूप्रति विश्वास गर्नेछन् भनी तिमीहरू आशा गर्नसक्छौ र?

وَ اِذَا لَقُوا الَّذِيْنَ اٰمَنُوْا قَالُوْۤا اٰمَنَّا ۚۖ وَ اِذَا خَلَا بَعْضُهُمْ اِلٰى بَعْضٍ قَالُوْۤا اَتُحَدِّثُوْنَهُمْ بِمَا فَتَحَ اللّٰهُ عَلَيْكُمْ لِيُحَآجُّوْكُمْ بِهٖ عِنْدَ رَبِّكُمْ ؕ اَفَلَا تَعْقِلُوْنَ ﴿٧٦﴾

७७.तथा जब तिनीहरू विश्वासीहरूलाई भेट्छन् तब तिनीहरू के भन्छन् भने- "हामी पनि विश्वास गर्छौं तथा जब तिनीहरू एकान्तमा एक-आपसमा भेट गर्छन् तब भन्छन्: "के तिमीहरू तिनीहरूलाई ती कुराहरूको जानकारी दिन्छौ जुन अल्लाहले तिमीहरूप्रति प्रकट

गरेका छन्, ताकि तिनीहरूले त्यसद्वारा तिमीहरूप्रति अल्लाहका सामुन्ने विवाद कायम गर्नेछन्? अतः के तिमीहरूको बुद्धि छैन?"

७८.के जुन कुरो तिनीहरू गोप्य राख्छन् तथा जुन कुरो प्रकट गर्छन् (ती सबै) अल्लाहले जान्दछन् भनी तिनीहरूलाई थाहा छैन?"

أَوَلَا يَعْلَمُونَ أَنَّ اللَّهَ يَعْلَمُ مَا يُسِرُّونَ وَمَا يُعْلِنُونَ ﴿٧٧﴾

७९.तथा तिनीहरूमध्ये कतिपय यस्ता निरक्षर व्यक्तिहरू छन् जसलाई (तिनीहरूका आफ्ना) मिथ्या अभिलाषाहरू बाहेक किताबको कुनै ज्ञान छैन, तथा तिनीहरू केवल तुकबन्दी गर्ने गर्छन् ।

وَمِنْهُمْ أُمِّيُّونَ لَا يَعْلَمُونَ الْكِتَابَ إِلَّا أَمَانِيَّ وَإِنْ هُمْ إِلَّا يَظُنُّونَ ﴿٧٨﴾

८०.धिक्कार छ तिनीहरूलाई, जसले आफ्ना हातले किताब लेख्छन् तथा त्यसद्वारा तुच्छ कमाई प्राप्तिका निम्ति यो अल्लाहको तर्फबाट हो भन्ने गर्छन् । तिनीहरूका हातले जे लेखे त्यसका कारण तिनीहरूलाई धिक्कार छ, तथा तिनीहरूले जे कमाए त्यसका कारण (पनि) तिनीहरूलाई धिक्कार छ ।

فَوَيْلٌ لِلَّذِينَ يَكْتُبُونَ الْكِتَابَ بِأَيْدِيهِمْ ثُمَّ يَقُولُونَ هَٰذَا مِنْ عِنْدِ اللَّهِ لِيَشْتَرُوا بِهِ ثَمَنًا قَلِيلًا ۖ فَوَيْلٌ لَهُمْ مِمَّا كَتَبَتْ أَيْدِيهِمْ وَوَيْلٌ لَهُمْ مِمَّا يَكْسِبُونَ ﴿٧٩﴾

८१.तथा तिनीहरू भन्छन्: "गिन्तीका निकै थोरै दिनहरूबाहेक हामीलाई अग्निले छुने छैन" । तिमी भनः "के तिमीहरूले अल्लाहबाट कुनै वचन लिएका छौ? तब त अल्लाहले आफ्नु वचन कदापि तोड्ने छैनन् । होइन भने के तिमीहरू अल्लाहका सम्बन्धमा यस्तो कुरो गर्दैछौ जसबारे तिमीहरूलाई केही थाहा छैन?

وَقَالُوا لَنْ تَمَسَّنَا النَّارُ إِلَّا أَيَّامًا مَعْدُودَةً ۚ قُلْ أَتَّخَذْتُمْ عِنْدَ اللَّهِ عَهْدًا فَلَنْ يُخْلِفَ اللَّهُ عَهْدَهُ ۖ أَمْ تَقُولُونَ عَلَى اللَّهِ مَا لَا تَعْلَمُونَ ﴿٨٠﴾

८२.हो, जब कसैले कुनै कुकर्म गर्छ, तब त्यसलाई त्यसको पापले घेर्छ, तिनीहरू नै अग्निवासी हुन् त्यहाँ तिनीहरू सदा बसोबास गर्नेछन् ।

بَلَىٰ مَنْ كَسَبَ سَيِّئَةً وَأَحَاطَتْ بِهِ خَطِيئَتُهُ فَأُولَٰئِكَ أَصْحَابُ النَّارِ ۖ هُمْ فِيهَا خَالِدُونَ ﴿٨١﴾

८३.तर ती व्यक्तिहरू जसले विश्वास स्थापना गर्छन् तथा पुण्यकार्य गर्छन् तिनीहरू नै स्वर्गवासी हुन्, त्यहाँ

وَالَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ

أُولَٰئِكَ أَصْحَابُ الْجَنَّةِ ۖ هُمْ فِيهَا خَالِدُونَ ﴿٨٢﴾

तिनीहरू सदा बसोबास गर्नेछन् ।

وَإِذْ أَخَذْنَا مِيثَاقَ بَنِي إِسْرَائِيلَ لَا تَعْبُدُونَ إِلَّا اللَّهَ وَبِالْوَالِدَيْنِ إِحْسَانًا وَذِي الْقُرْبَىٰ وَالْيَتَامَىٰ وَالْمَسَاكِينِ وَقُولُوا لِلنَّاسِ حُسْنًا وَأَقِيمُوا الصَّلَاةَ وَآتُوا الزَّكَاةَ ثُمَّ تَوَلَّيْتُمْ إِلَّا قَلِيلًا مِنْكُمْ وَأَنْتُمْ مُعْرِضُونَ ﴿٨٣﴾

८४.तथा (त्यस समयको स्मरण गर) जब हामीले इजराईलका सन्तानबाट के अङ्गीकार लिएका थियौं भने- "तिमीहरू अल्लाहबाहेक (कसैको) उपासना गर्नेछैनौ, तथा आफ्ना माता-पिता, कुटुम्ब, अनाथ, तथा गरीबहरूप्रति उदारतापूर्ण व्यवहार गर्नेछौं, तथा मानिसहरूसँग दयाभावले वार्ता गर तथा नमाजको अनुष्ठान गर र जगात देऊ । तर त्यसपछि तिमीहरूमध्ये केही व्यक्तिहरूबाहेक अन्य सबै अवज्ञाका साथ विमुख भयौ ।

وَإِذْ أَخَذْنَا مِيثَاقَكُمْ لَا تَسْفِكُونَ دِمَاءَكُمْ وَلَا تُخْرِجُونَ أَنْفُسَكُمْ مِنْ دِيَارِكُمْ ثُمَّ أَقْرَرْتُمْ وَأَنْتُمْ تَشْهَدُونَ ﴿٨٤﴾

८५.तथा (त्यस समयको स्मरण गर) जब हामीले तिमीहरूबाट के अङ्गीकार लिएका थियौं भने- "तिमीहरू परस्पर रक्तपात गर्नेछैनौं तथा आफ्ना मानिसहरूलाई तिनका घरबाट निकाल्ने छैनौ," तिमीहरूले त्यो कुरो कबुल गरेका थियौ, तथा (त्यसप्रति) तिमीहरू साक्षी पनि रहँदै आएका छौ ।

ثُمَّ أَنْتُمْ هَٰؤُلَاءِ تَقْتُلُونَ أَنْفُسَكُمْ وَتُخْرِجُونَ فَرِيقًا مِنْكُمْ مِنْ دِيَارِهِمْ تَظَاهَرُونَ عَلَيْهِمْ بِالْإِثْمِ وَالْعُدْوَانِ وَإِنْ يَأْتُوكُمْ أُسَارَىٰ تُفَادُوهُمْ وَهُوَ مُحَرَّمٌ عَلَيْكُمْ إِخْرَاجُهُمْ ۚ أَفَتُؤْمِنُونَ بِبَعْضِ الْكِتَابِ وَتَكْفُرُونَ بِبَعْضٍ ۚ فَمَا جَزَاءُ مَنْ يَفْعَلُ ذَٰلِكَ مِنْكُمْ إِلَّا خِزْيٌ فِي الْحَيَاةِ الدُّنْيَا ۖ وَيَوْمَ الْقِيَامَةِ يُرَدُّونَ إِلَىٰ أَشَدِّ الْعَذَابِ ۗ وَمَا اللَّهُ بِغَافِلٍ عَمَّا تَعْمَلُونَ ﴿٨٥﴾

८६.पुन: तिमीहरू नै हौ जसले आफन्त-हरूको हत्या गर्ने गर्छौ तथा आफूहरूमध्ये एक समूहलाई पाप तथा अत्याचारपूर्वक उनीहरूविरुद्ध परस्पर सहयोगी बनी तिनीहरूलाई आफ्ना घरबाट निकाल्छौ, तथा यदि तिनीहरू बन्दीका रूपमा तिमीहरू समक्ष आए भने हर्जाना तिरेर छुटाउछौ, वस्तुत: उनीहरूलाई निकाल्नु नै तिमीहरूका निम्ति अवैध थियो ! त्यसो भए के तिमीहरू किताबको एकांशप्रति भने विश्वास गर्छौ तथा अर्को अंशप्रति भने अविश्वास? अत: तिमीहरूमध्ये जसले त्यसो गर्छ यस भौतिक जीवनमा लाञ्छनाबाहेक त्यसको अरू के पुरस्कार हुनसक्छ र? तथा तिनीहरूलाई प्रलयका दिन अझ कठोर दण्डतर्फ फर्काइनेछ ।

तथा तिमीहरू जुन कार्य गरिरहेका छौ त्यसप्रति अल्लाह अविदित छैनन् ।

أُولٰٓئِكَ الَّذِيْنَ اشْتَرَوُا الْحَيٰوةَ الدُّنْيَا بِالْاٰخِرَةِ فَلَا يُخَفَّفُ عَنْهُمُ الْعَذَابُ وَلَا هُمْ يُنْصَرُوْنَ ﴿٨٦﴾

८७.यिनीहरू नै ती व्यक्तिहरू हुन् जसले यस जीवनलाई परलोकमाथि प्राथमिकता दिएका छन् । अतः न त तिनीहरूको दण्ड घटाईने छ न तिनीहरूलाई (कुनै अन्य मार्गबाट) सहयोग प्राप्त हुनेछ ।

وَلَقَدْ اٰتَيْنَا مُوْسَى الْكِتٰبَ وَقَفَّيْنَا مِنْۢ بَعْدِهٖ بِالرُّسُلِ وَاٰتَيْنَا عِيْسَى ابْنَ مَرْيَمَ الْبَيِّنٰتِ وَاَيَّدْنٰهُ بِرُوْحِ الْقُدُسِ اَفَكُلَّمَا جَآءَكُمْ رَسُوْلٌۢ بِمَا لَا تَهْوٰٓى اَنْفُسُكُمُ اسْتَكْبَرْتُمْ فَفَرِيْقًا كَذَّبْتُمْ وَفَرِيْقًا تَقْتُلُوْنَ ﴿٨٧﴾

८८.तथा निश्चय नै, हामीले मूसालाई किताब प्रदान गरेका थियौं तथा उनीपछि उनकै पदचिह्नमा हिंड्ने सन्देशवाहक-हरूलाई हामीले पठायौं, तथा मरियमका पुत्र येशूलाई हामीले स्पष्ट चिह्नहरू प्रदान गऱ्यौं र पवित्र आत्माद्वारा उनलाई शक्ति प्रदान गऱ्यौं । तब के जब जब तिमीहरूकहाँ कुनै सन्देशवाहक तिमीहरूले नचाहेको वस्तु लिएर आयो तब तिमीहरूले घमण्डका साथ केहीसँग झुटोव्यक्तिसरह व्यवहार गऱ्यौ तथा अन्य केहीको हत्या गऱ्यौ?

وَقَالُوْا قُلُوْبُنَا غُلْفٌ بَلْ لَّعَنَهُمُ اللّٰهُ بِكُفْرِهِمْ فَقَلِيْلًا مَّا يُؤْمِنُوْنَ ﴿٨٨﴾

८९.तिनीहरूले भने: "हाम्रो हृदय त आवृत छ ।" होइन, अपितु अल्लाहले तिनीहरूको अनास्थाका कारण तिनीहरू-लाई श्रापित गरे । अतः तिनीहरू अति कम विश्वास गर्छन् ।

وَلَمَّا جَآءَهُمْ كِتٰبٌ مِّنْ عِنْدِ اللّٰهِ مُصَدِّقٌ لِّمَا مَعَهُمْ وَكَانُوْا مِنْ قَبْلُ يَسْتَفْتِحُوْنَ عَلَى الَّذِيْنَ كَفَرُوْا فَلَمَّا جَآءَهُمْ مَّا عَرَفُوْا كَفَرُوْا بِهٖ فَلَعْنَةُ اللّٰهِ عَلَى الْكٰفِرِيْنَ ﴿٨٩﴾

९०.तथा जब तिनीहरू समक्ष अल्लाहका तर्फबाट तिनीहरूकहाँ रहेको वस्तुलाई सत्य साबित गर्न एउटा (यस्तो) पुस्तक आयो तथा तिनीहरू त्यसअघि अविश्वासीहरूमाथि विजयप्राप्तिका निम्ति प्रार्थना गर्ने गर्थे तर जब तिनीहरूसमक्ष त्यो वस्तु आयो जसलाई तिनीहरूले सनाखत गरे तब त्यसलाई अस्वीकार गरे । अतः (यस्ता) आस्थाहीन व्यक्तिहरू-माथि अल्लाहको अभिशाप पर्छ ।

بِئْسَمَا اشْتَرَوْا بِهٖٓ اَنْفُسَهُمْ اَنْ يَّكْفُرُوْا

९१.त्यो अति निकृष्ट वस्तु हो जसको सट्टा तिनीहरूले आफ्नो आत्मालाई बेचेका

بِمَآ اَنۡزَلَ اللّٰهُ بَغۡيًا اَنۡ يُّنَزِّلَ اللّٰهُ مِنۡ فَضۡلِهٖ عَلٰى مَنۡ يَّشَآءُ مِنۡ عِبَادِهٖ ۚ فَبَآءُوۡ بِغَضَبٍ عَلٰى غَضَبٍ ؕ وَلِلۡكٰفِرِيۡنَ عَذَابٌ مُّهِيۡنٌ ﴿٩٠﴾

छन्, त्यो के भने अल्लाह आफ्ना भक्तहरूमध्ये जसप्रति प्रसन्न हुन्छन् त्यसप्रति आफ्नो कृपावृष्टि गर्छन् भन्ने कुरामा रिसाएर अल्लाहले अवतीर्ण गरेको वाणीप्रति अविश्वास गर्नु । अत: यी व्यक्तिहरू प्रकोपमाथि प्रकोपका शिकार भएका छन् तथा यस्ता आस्थारहित व्यक्तिहरूका निम्ति अपमानजनक दण्ड छ ।

وَاِذَا قِيۡلَ لَهُمۡ اٰمِنُوۡا بِمَآ اَنۡزَلَ اللّٰهُ قَالُوۡا نُؤۡمِنُ بِمَآ اُنۡزِلَ عَلَيۡنَا وَ يَكۡفُرُوۡنَ بِمَا وَرَآءَهٗ ۚ وَهُوَ الۡحَقُّ مُصَدِّقًا لِّمَا مَعَهُمۡ ؕ قُلۡ فَلِمَ تَقۡتُلُوۡنَ اَنۡۢبِيَآءَ اللّٰهِ مِنۡ قَبۡلُ اِنۡ كُنۡتُمۡ مُّؤۡمِنِيۡنَ ﴿٩١﴾

९२.तथा जब तिनीहरूलाई अल्लाहले अवतीर्ण गरेका कुरामा विश्वास स्थापना गर भनी भनिन्छ तब के भन्छन् भने- "हामी त्यसप्रति विश्वास गर्छौं जुनकुरो हामीप्रति अवतीर्ण गरिएको छ," तथा त्यसपछि (अवतीर्ण गरिएको) कुराप्रति तिनीहरू अविश्वास गर्छन् । वस्तुत: त्यो कुरो पूर्णरूपले सत्य छ, जसले त्यसलाई सत्य सावित गर्छ जुनकुरो तिनीहरूसित छ । तिमी भन: "यदि तिमीहरू विश्वासी थियौ भने योभन्दा अघि किन तिमीहरू अल्लाहका नबीहरूको (सिद्धपुरुषहरूको) हत्या गर्ने प्रयासमा थियौ?

وَلَقَدۡ جَآءَكُمۡ مُّوۡسٰى بِالۡبَيِّنٰتِ ثُمَّ اتَّخَذۡتُمُ الۡعِجۡلَ مِنۡۢ بَعۡدِهٖ وَاَنۡتُمۡ ظٰلِمُوۡنَ ﴿٩٢﴾

९३.तथा निश्चय नै, मूसा तिमीहरूसमक्ष स्पष्ट चिह्नहरूसहित आएका थिए, पुन: तिमीहरूले उनको अनुपस्थितिमा अन्याय-कारी बनी बाच्छोलाई (उपास्य) बनायौ ।

وَ اِذۡ اَخَذۡنَا مِيۡثَاقَكُمۡ وَ رَفَعۡنَا فَوۡقَكُمُ الطُّوۡرَ ؕ خُذُوۡا مَآ اٰتَيۡنٰكُمۡ بِقُوَّةٍ وَّ اسۡمَعُوۡا ؕ قَالُوۡا سَمِعۡنَا وَ عَصَيۡنَا ۗ وَ اُشۡرِبُوۡا فِىۡ قُلُوۡبِهِمُ الۡعِجۡلَ بِكُفۡرِهِمۡ ؕ قُلۡ بِئۡسَمَا يَاۡمُرُكُمۡ بِهٖۤ اِيۡمَانُكُمۡ اِنۡ كُنۡتُمۡ مُّؤۡمِنِيۡنَ ﴿٩٣﴾

९४.तथा (त्यस समयको स्मरण गर) जब हामीले तिमीहरूबाट अङ्गीकार लिएका थियौं र के भन्दै तिमीहरूमाथि पर्वत खडा गरेका थियौ भने- "हामीले तिमीहरूलाई जुनकुरो दिएका छौं, त्यसलाई दृढतापूर्वक अंगाल तथा ध्यानपूर्वक सुन, तिनीहरूले भने- हामीले सुन्यौं तथा उल्लङ्घन गर्ने निर्णय गऱ्यौ, तथा अनास्थाका कारण त्यस बाच्छोप्रति तिनीहरूको हृदयमा प्रेम बस्यो । तिमी भन: यदि तिमीहरूमा कुनै आस्था छ भने

जुन कार्य गर्ने आदेश तिमीहरूलाई आफ्नो आस्थाले दिएको छ त्यो कार्य अति निकृष्ट छ ।

९४.तिमी भन: "यदि अल्लाहका दृष्टिमा परलोकको घर अन्य मानिसहरूलाई नभई केवल तिमीहरूका निम्ति नै हो भने र यदि तिमीहरू साँचा हौ भने तिमीहरू मृत्युको इच्छा गर ।"

قُلْ إِن كَانَتْ لَكُمُ الدَّارُ الْآخِرَةُ
عِندَ اللَّهِ خَالِصَةً مِّن دُونِ النَّاسِ
فَتَمَنَّوُا الْمَوْتَ إِن كُنتُمْ صَادِقِينَ ﴿٩٤﴾

९५.तर तिनीहरूका हातले जुन कार्यहरू पहिला गरिसकेका छन् त्यसका कारण तिनीहरू कदापि त्यसको इच्छा गर्नेछैनन् । तथा अत्याचारीहरूलाई अल्लाहले राम्ररी जान्दछन् ।

وَلَن يَتَمَنَّوْهُ أَبَدًا بِمَا قَدَّمَتْ
أَيْدِيهِمْ ۗ وَاللَّهُ عَلِيمٌ بِالظَّالِمِينَ ﴿٩٥﴾

९६.तथा तिमीले अवश्य तिनीहरूलाई सबै मानिसहरूभन्दा तथा ती व्यक्तिहरूभन्दा पनि जसले विभिन्न वस्तुहरूलाई (अल्लाहतुल्य) मान्ने गर्छन्, जीवनप्रति अत्याधिक आसक्त पाउनेछौ । तिनीहरू-मध्ये प्रत्येक व्यक्ति उसलाई एकहजार वर्ष लामो उमेर प्राप्त होस् भन्ने इच्छा गर्छ, तर त्यसलाई त्यो उमेर प्राप्त भए तापनि त्यसले उसलाई दण्डबाट बचाउन सक्नेछैन, तथा तिनीहरूका प्रत्येक कार्यहरूलाई अल्लाहले देखिरहेछन् ।

وَلَتَجِدَنَّهُمْ أَحْرَصَ النَّاسِ عَلَىٰ
حَيَاةٍ ۚ وَمِنَ الَّذِينَ أَشْرَكُوا ۚ يَوَدُّ
أَحَدُهُمْ لَوْ يُعَمَّرُ أَلْفَ سَنَةٍ وَمَا هُوَ
بِمُزَحْزِحِهِ مِنَ الْعَذَابِ أَن يُعَمَّرَ ۗ وَ
اللَّهُ بَصِيرٌ بِمَا يَعْمَلُونَ ﴿٩٦﴾

९७.तिमी भन: "जो व्यक्ति केवल यसै कारण ग्याब्रिएलको (जिब्राइलको) शत्रु रहेको छ– किनभने ती उनै हुन् जसले अल्लाहको आदेशद्वारा तिम्रो हृदयमा त्यो वस्तु अवतीर्ण गरे जसले त्यसअघिका वस्तुलाई सत्य साबित गर्छ, तथा विश्वासीहरूका निम्ति त्यो मार्गदर्शन तथा सु-समाचार रहेको छ ।

قُلْ مَن كَانَ عَدُوًّا لِّجِبْرِيلَ فَإِنَّهُ نَزَّلَهُ
عَلَىٰ قَلْبِكَ بِإِذْنِ اللَّهِ مُصَدِّقًا لِّمَا بَيْنَ
يَدَيْهِ وَهُدًى وَبُشْرَىٰ لِلْمُؤْمِنِينَ ﴿٩٧﴾

९८."जुन व्यक्ति अल्लाह तथा उनका फरिस्ताहरू, उनका सन्देशवाहकहरू, ग्याब्रिएल र मिखाएलको शत्रु छ, निश्चय नै, अल्लाह (त्यस्ता) आस्थाहीन व्यक्ति-

مَن كَانَ عَدُوًّا لِّلَّهِ وَمَلَائِكَتِهِ وَرُسُلِهِ
وَجِبْرِيلَ وَمِيكَالَ فَإِنَّ اللَّهَ عَدُوٌّ
لِّلْكَافِرِينَ ﴿٩٨﴾

हरूका शत्रु हुन् !

وَلَقَدْ أَنزَلْنَا إِلَيْكَ آيَاتٍ بَيِّنَاتٍ ۖ وَ
مَا يَكْفُرُ بِهَا إِلَّا الْفَاسِقُونَ ﴿١٠٠﴾

१००.तथा निश्चय नै, हामीले तिमीमाथि स्पष्ट चिह्नहरू अवतीर्ण गरेका छौं तथा अवज्ञाकारीहरूबाहेक अरू कसैले तिनी-हरूप्रति अविश्वास गर्दैन ।

أَوَكُلَّمَا عَاهَدُوا عَهْدًا نَّبَذَهُ فَرِيقٌ
مِّنْهُم ۚ بَلْ أَكْثَرُهُمْ لَا يُؤْمِنُونَ ﴿١٠١﴾

१०१.के ! जब प्रत्येक पटक तिनीहरूले कुनै अङ्गीकार गरे तब तिनीहरूमध्ये एउटा समूहले त्यसलाई एकतर्फ फ्याँकि दिएन र? त्यत्तिमात्र होइन, अपितु तिनीहरूमध्ये धेरै जसोले त विश्वासै गर्दैनन् ।

وَلَمَّا جَاءَهُمْ رَسُولٌ مِّنْ عِندِ اللَّهِ
مُصَدِّقٌ لِّمَا مَعَهُمْ نَبَذَ فَرِيقٌ مِّنَ
الَّذِينَ أُوتُوا الْكِتَابَ كِتَابَ اللَّهِ
وَرَاءَ ظُهُورِهِمْ كَأَنَّهُمْ لَا يَعْلَمُونَ ﴿١٠٢﴾

१०२.तथा (अब) जब तिनीहरूसमक्ष अल्लाहका तर्फबाट एक जना यस्ता सन्देशवाहक आए, जसले तिनीहरूकहाँ रहेको वस्तुलाई पूर्णता प्रदान गर्छन्, तब तिनीहरूमध्ये जसलाई पुस्तक दिइएको थियो एक समूहले अल्लाहको त्यस पुस्तकलाई आफ्नो पिठ्यूँपछाडि फ्याँकि दियो मानौं तिनीहरू (त्यसलाई) जान्दैनथे ।

وَاتَّبَعُوا مَا تَتْلُوا الشَّيَاطِينُ عَلَىٰ
مُلْكِ سُلَيْمَانَ ۖ وَمَا كَفَرَ سُلَيْمَانُ وَلَٰكِنَّ
الشَّيَاطِينَ كَفَرُوا يُعَلِّمُونَ النَّاسَ
السِّحْرَ ۚ وَمَا أُنزِلَ عَلَى الْمَلَكَيْنِ
بِبَابِلَ هَارُوتَ وَمَارُوتَ ۚ وَمَا
يُعَلِّمَانِ مِنْ أَحَدٍ حَتَّىٰ يَقُولَا إِنَّمَا
نَحْنُ فِتْنَةٌ فَلَا تَكْفُرْ ۖ فَيَتَعَلَّمُونَ
مِنْهُمَا مَا يُفَرِّقُونَ بِهِ بَيْنَ الْمَرْءِ
وَزَوْجِهِ ۚ وَمَا هُم بِضَارِّينَ بِهِ مِنْ أَحَدٍ
إِلَّا بِإِذْنِ اللَّهِ ۚ وَيَتَعَلَّمُونَ مَا يَضُرُّهُمْ
وَلَا يَنفَعُهُمْ ۚ وَلَقَدْ عَلِمُوا لَمَنِ اشْتَرَاهُ

१०३.तथा तिनीहरूले सुलेमानका शासन-कालमा राज्यका विद्रोहीहरूले जुन (मार्ग) अपनाएका थिए त्यसको अनुसरण गरे । तथा सुलेमान अविश्वासी थिएनन् अपितु (ती) विद्रोहीहरू अविश्वासी थिए; (किनभने) मानिसहरूलाई तिनीहरू मिथ्या तथा कपटपूर्ण कुराहरू सिकाउने गर्थे, तथा (उनीहरू) त्यस (कुरा)लाई (पछ्याउँथे) जुन बेबिलनमा हारुत र मारुत नामका दुईजना फरिस्ताप्रति अवतीर्ण गरिएको थियो । वस्तुत: ती दुवैले कसैलाई तबसम्म केही सिकाउदैनथे जबसम्म तिनीहरू "हामी परीक्षार्थ हौं त्यसकारण अविश्वास नगर" भनी भन्दैनथे । अत: मानिसहरूले तिनीहरूबाट त्यो कुरो सिके जसद्वारा तिनीहरू पति-पत्नी बीच विभेद उत्पन्न गर्थे, तर तिनीहरू अल्लाहको

مَا لَهٗ فِي الْاٰخِرَةِ مِنْ خَلَاقٍ ۟ؕ وَلَبِئْسَ مَا شَرَوْا بِهٖٓ اَنْفُسَهُمْ ؕ لَوْ كَانُوْا يَعْلَمُوْنَ ۝

आदेशबाहेक त्यसद्वारा कसैको हानि गर्दैनथे । (त्यसका विपरीत), यी व्यक्तिहरू त त्यो कुरो सिकिरहेछन् जसले तिनीहरूको हानी गर्छ र लाभदायक छैन । तथा तिनीहरूले निश्चितरूपमा के कुरो जानिसकेका छन् भने जसले क्रय गर्छ त्यसका निम्ति परलोकमा कुनै पुण्यफल प्राप्य छैन । तथा निश्चय नै, त्यो अति निकृष्ट वस्तु हो जसको सट्टा तिनीहरूले आफ्नो आत्मालाई बेचेका छन् । हाय ! यदि तिनीहरूले जानेका भए !

وَلَوْ اَنَّهُمْ اٰمَنُوْا وَاتَّقَوْا لَمَثُوْبَةٌ مِّنْ عِنْدِ اللّٰهِ خَيْرٌ ؕ لَوْ كَانُوْا يَعْلَمُوْنَ ۝

१०४.तथा यदि तिनीहरूले विश्वास स्थापना गरेका भए र पूर्ण्यकर्म गरेका भए, अल्लाहले प्रदान गर्ने प्रतिदान नै निश्चयपूर्वक उत्तम हुने थियो, हाय ! यदि तिनीहरूले त्यो जान्न सकेका भए !

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا لَا تَقُوْلُوْا رَاعِنَا وَقُوْلُوا انْظُرْنَا وَاسْمَعُوْا ؕ وَلِلْكٰفِرِيْنَ عَذَابٌ اَلِيْمٌ ۝

१०५.हे विश्वासीजन हो ! "राइना" नभन; बरु "उन्जुर्ना" भन्ने गर, तथा सुन्ने
गर । तथा अविश्वासीहरूका निम्ति कष्टदायक दण्ड छ ।

مَا يَوَدُّ الَّذِيْنَ كَفَرُوْا مِنْ اَهْلِ الْكِتٰبِ وَلَا الْمُشْرِكِيْنَ اَنْ يُّنَزَّلَ عَلَيْكُمْ مِّنْ خَيْرٍ مِّنْ رَّبِّكُمْ ؕ وَاللّٰهُ يَخْتَصُّ بِرَحْمَتِهٖ مَنْ يَّشَآءُ ؕ وَاللّٰهُ ذُو الْفَضْلِ الْعَظِيْمِ ۝

१०६.पुस्तकप्राप्त व्यक्तिहरू तथा ती व्यक्तिहरू जसले (अल्लाहका) भागीदार तुल्याउने गर्छन्, तिनीहरूमध्ये अविश्वासी-हरूले तिमीहरूप्रति तिमीहरूका प्रतिपालकका तर्फबाट कुनै प्रकारको करुणा अवतीर्ण होस् भन्ने इच्छा गर्दैनन् तर अल्लाहले आफ्नो कृपाका निम्ति त्यसैलाई रोज्छन् जसप्रति उनी प्रसन्न हुन्छन् तथा अल्लाह अति अनुग्रहकारी छन् ।

مَا نَنْسَخْ مِنْ اٰيَةٍ اَوْ نُنْسِهَا نَاْتِ بِخَيْرٍ مِّنْهَآ اَوْ مِثْلِهَا ؕ اَلَمْ تَعْلَمْ اَنَّ اللّٰهَ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ۝

१०७.जुन चिह्नलाई हामी लोप गराउँछौं अथवा बिर्सिदिन्छौं, त्योभन्दा उत्तम अथवा त्योजस्तै हामी ल्याउँछौं । के तिमीलाई अल्लाहमा ती सबै कार्य गर्ने क्षमता छ जसको उनले इच्छा गर्छन् भन्ने कुरा थाहा छैन?

أَلَمْ تَعْلَمْ أَنَّ اللّٰهَ لَهُ مُلْكُ السَّمٰوٰتِ وَالْأَرْضِ ۗ وَمَا لَكُمْ مِّنْ دُوْنِ اللّٰهِ مِنْ وَّلِيٍّ وَّلَا نَصِيْرٍ ﴿١٠٨﴾

१०८.के तिमीलाई आकाश तथा पृथ्वीको साम्राज्य केवल अल्लाहको हो भनी थाहा छैन? तथा अल्लाहबाहेक तिमीहरूका निम्ति न कुनै रक्षक छ न ता सहयोगी नै ।

أَمْ تُرِيْدُوْنَ أَنْ تَسْـَٔلُوْا رَسُوْلَكُمْ كَمَا سُئِلَ مُوْسٰى مِنْ قَبْلُ ۗ وَمَنْ يَّتَبَدَّلِ الْكُفْرَ بِالْإِيْمَانِ فَقَدْ ضَلَّ سَوَآءَ السَّبِيْلِ ﴿١٠٩﴾

१०९.के तिमीहरू पनि तिमीहरूतर्फ पठाइएका सन्देशवाहकलाई त्यसैगरी प्रश्न गर्न चाहन्छौं जसरी योभन्दा पहिला मूसासँग प्रश्न गरिएको थियो? तथा जुन व्यक्तिले आस्थाको सट्टा अनास्थालाई अँगाल्यो निश्चय नै त्यो व्यक्ति सन्मार्गबाट विचलित भयो ।

وَدَّ كَثِيْرٌ مِّنْ أَهْلِ الْكِتٰبِ لَوْ يَرُدُّوْنَكُمْ مِّنْۢ بَعْدِ إِيْمَانِكُمْ كُفَّارًا ۚ حَسَدًا مِّنْ عِنْدِ أَنْفُسِهِمْ مِّنْۢ بَعْدِ مَا تَبَيَّنَ لَهُمُ الْحَقُّ ۚ فَاعْفُوْا وَاصْفَحُوْا حَتّٰى يَأْتِيَ اللّٰهُ بِأَمْرِهٖ ۗ إِنَّ اللّٰهَ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ﴿١١٠﴾

११०.पुस्तक प्राप्त व्यक्तिहरूमध्ये धेरै यस्ता व्यक्तिहरू पनि छन् जसले तिनीहरूप्रति सत्य पूर्णरूपले प्रमाणित भएपश्चात् पनि केवल आफ्ना मनको इर्ष्याले गर्दा तिमीहरूले विश्वासस्थापना गरेपश्चात् पुन: तिमीहरू-लाई अविश्वासी तुल्याउने इच्छा गर्छन् । परन्तु तबसम्म तिनीहरूलाई क्षमा गर तथा (तिनीहरूतर्फ) ध्यान नदेऊ, जबसम्म अल्लाहले आफ्नु निर्णय अवतीर्ण गर्दैनन् । निश्चय नै अल्लाहमा ती सबै कार्य गर्ने शक्ति छ जसको उनले इच्छा गर्छन् ।

وَأَقِيْمُوا الصَّلٰوةَ وَاٰتُوا الزَّكٰوةَ ۗ وَمَا تُقَدِّمُوْا لِأَنْفُسِكُمْ مِّنْ خَيْرٍ تَجِدُوْهُ عِنْدَ اللّٰهِ ۗ إِنَّ اللّٰهَ بِمَا تَعْمَلُوْنَ بَصِيْرٌ ﴿١١١﴾

१११.तथा नमाजको अनुष्ठान गर र जगात दिने गर, तथा जुन पुण्य तिमीहरूले आफ्नानिम्ति अगाडि पठाउने छौ त्यसलाई अल्लाहसमक्ष तिमीहरूले पाउनेछौ । निश्चय नै तिमीहरूका प्रत्येक कार्यहरूलाई अल्लाहले देखिरहेछन् ।

وَقَالُوْا لَنْ يَّدْخُلَ الْجَنَّةَ إِلَّا مَنْ كَانَ هُوْدًا أَوْ نَصٰرٰى ۗ تِلْكَ أَمَانِيُّهُمْ ۗ قُلْ هَاتُوْا بُرْهَانَكُمْ إِنْ كُنْتُمْ صٰدِقِيْنَ ﴿١١٢﴾

११२.तथा तिनीहरू भन्छन्; "यहुदी अथवा इसाईबाहेक अन्यकोही स्वर्गमा कदापि प्रवेश गर्नेछैन ।" यी त तिनीहरूका व्यर्थ मनोवाञ्छाहरू हुन् । तिमी भन: "यदि तिमीहरू साँचा हौ भने आफ्नो प्रमाण प्रस्तुत गर ।"

بَلٰى ۚ مَنْ أَسْلَمَ وَجْهَهٗ لِلّٰهِ وَهُوَ مُحْسِنٌ

११३.होइन, (अपितु) जसले उत्तम

فَلَهُ أَجْرُهُ عِنْدَ رَبِّهِ وَلَا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُونَ ﴿١١٢﴾

व्यवहार गर्दै अल्लाहप्रति आत्मसमर्पण गर्छ, त्यसले आफ्नो प्रतिदान आफ्ना प्रतिपालककहाँ प्राप्त गर्नेछ । त्यस्ता व्यक्तिहरूलाई न कुनै प्रकारको डर ( हुनेछ) न त तिनीहरू कहिल्यै शोकग्रस्त हुनेछन् ।

وَقَالَتِ الْيَهُودُ لَيْسَتِ النَّصَارَى عَلَى شَيْءٍ وَقَالَتِ النَّصَارَى لَيْسَتِ الْيَهُودُ عَلَى شَيْءٍ وَهُمْ يَتْلُونَ الْكِتَابَ كَذَلِكَ قَالَ الَّذِينَ لَا يَعْلَمُونَ مِثْلَ قَوْلِهِمْ فَاللَّهُ يَحْكُمُ بَيْنَهُمْ يَوْمَ الْقِيَامَةِ فِيمَا كَانُوا فِيهِ يَخْتَلِفُونَ ﴿١١٣﴾

११४.तथा यहुदीहरू भन्छन्; "इसाईहरू कुनै कुराप्रति स्थिर छैनन्, तथा इसाईहरू भन्छन्: "यहुदीहरू कुनै कुराप्रति स्थिर छैनन्" जबकि तिनीहरू (दुबै एउटै) पुस्तक पढ्छन् । यसै प्रकार ती अबोध व्यक्तिहरू पनि यिनीहरूझैं कुरा गर्ने गर्थे । अत: जुन कुराप्रति यिनीहरू परस्पर मतभेद गर्छन् प्रलयका दिन अल्लाहले त्यसबारे तिनीहरूबीच निर्णय गर्नेछन् ।

وَمَنْ أَظْلَمُ مِمَّنْ مَنَعَ مَسَاجِدَ اللَّهِ أَنْ يُذْكَرَ فِيهَا اسْمُهُ وَسَعَى فِي خَرَابِهَا أُولَئِكَ مَا كَانَ لَهُمْ أَنْ يَدْخُلُوهَا إِلَّا خَائِفِينَ لَهُمْ فِي الدُّنْيَا خِزْيٌ وَلَهُمْ فِي الْآخِرَةِ عَذَابٌ عَظِيمٌ ﴿١١٤﴾

११५.अत: जसले अल्लाहका मस्जिदहरूमा उनको स्मरण गर्नबाट मानिसहरूलाई रोक्छ तथा तिनीहरूलाई ध्वंस गर्ने प्रयास गर्छ त्योभन्दा ठूलो अत्याचारी को हुनसक्छ र? यस्ता व्यक्तिहरूका निम्ति भयविहीन भै ती मस्जिदहरूमा प्रवेश गर्नु नै उचित थिएन । यिनका निम्ति यस संसारमा लाञ्छना तथा परलोकमा ठूलो दण्ड रहेको छ ।

وَلِلَّهِ الْمَشْرِقُ وَالْمَغْرِبُ فَأَيْنَمَا تُوَلُّوا فَثَمَّ وَجْهُ اللَّهِ إِنَّ اللَّهَ وَاسِعٌ عَلِيمٌ ﴿١١٥﴾

११६.तथा पूर्व र पश्चिम अल्लाहकै हुन्; त्यसकारण जता तिमीहरू फर्कनेछौ त्यतै अल्लाहको ध्यान रहनेछ । निश्चय नै अल्लाह दानशील, सर्वज्ञ छन् ।

وَقَالُوا اتَّخَذَ اللَّهُ وَلَدًا سُبْحَانَهُ بَلْ لَهُ مَا فِي السَّمَاوَاتِ وَالْأَرْضِ كُلٌّ لَهُ قَانِتُونَ ﴿١١٦﴾

११७.तथा तिनीहरू भन्छन्; "अल्लाहले (आफ्ना लागि) एउटा पुत्र ग्रहण गरेका छन् ।" उनी पवित्र छन् ! होइन, (अपितु) आकाश तथा पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरू उनकै हुन् । सबै उनकै आज्ञाकारी छन् ।

بَدِيعُ السَّمَاوَاتِ وَالْأَرْضِ وَإِذَا قَضَى أَمْرًا فَإِنَّمَا يَقُولُ لَهُ كُنْ فَيَكُونُ ﴿١١٧﴾

११८.उनी आकाशमण्डल तथा पृथ्वीका स्रष्टा हुन् जब उनी कुनै वस्तुबारे निर्णय गर्छन् तब त्यसलाई केवल भई जा"

भन्छन् अतः त्यो भई हाल्छ ।

وَقَالَ الَّذِينَ لَا يَعْلَمُونَ لَوْلَا يُكَلِّمُنَا اللَّهُ أَوْ تَأْتِينَا آيَةٌ ۗ كَذَٰلِكَ قَالَ الَّذِينَ مِن قَبْلِهِم مِّثْلَ قَوْلِهِمْ ۘ تَشَابَهَتْ قُلُوبُهُمْ ۗ قَدْ بَيَّنَّا الْآيَاتِ لِقَوْمٍ يُوقِنُونَ ﴿١١٨﴾

११९.तथा ती व्यक्तिहरू जसमा ज्ञान छैन के भन्छन् भने- "किन अल्लाह हामीहरूसँग वार्ता गर्दैनन् अथवा हाम्रा निम्ति कुनै चिह्न किन आउँदैन? यसै प्रकार यिनीहरूभन्दा पहिलाका व्यक्तिहरू यिनीहरूकैझैं कुरा गर्ने गर्थे तिनीहरू सबैको हृदय एकै प्रकारका छन् । निश्चय नै हामीले ती व्यक्तिहरूका निम्ति जसले दृढ विश्वास गर्छन् सबै प्रकारका निर्देशनहरू स्पष्टरूपले वर्णन गरिसकेका छौं ।

إِنَّا أَرْسَلْنَاكَ بِالْحَقِّ بَشِيرًا وَنَذِيرًا ۖ وَلَا تُسْأَلُ عَنْ أَصْحَابِ الْجَحِيمِ ﴿١١٩﴾

१२०.हामीले तिमीलाई सत्यताका साथ एकजना शुभसन्देशवाहक तथा सर्तककारी स्वरूप पठाएका हौं । तथा नरकवासी-हरूका सम्बन्धमा तिमीसँग कुनै प्रकारको प्रश्न गरिनेछैन ।

وَلَن تَرْضَىٰ عَنكَ الْيَهُودُ وَلَا النَّصَارَىٰ حَتَّىٰ تَتَّبِعَ مِلَّتَهُمْ ۗ قُلْ إِنَّ هُدَى اللَّهِ هُوَ الْهُدَىٰ ۗ وَلَئِنِ اتَّبَعْتَ أَهْوَاءَهُم بَعْدَ الَّذِي جَاءَكَ مِنَ الْعِلْمِ ۙ مَا لَكَ مِنَ اللَّهِ مِن وَلِيٍّ وَلَا نَصِيرٍ ﴿١٢٠﴾

१२१.तथा यहुदी र इसाईहरू तबसम्म तिमीप्रति प्रसन्न हुनेछैनन् जबसम्म तिमीले तिनको धर्मको अनुसरण गर्नेछैनौ । तिमी भन, "निश्चय नै, अल्लाहद्वारा प्रदर्शित मार्ग नै सन्मार्ग हो ।" तथा तिमीसमक्ष ज्ञानको आगमन भएपश्चात् पनि यदि तिमीले तिनीहरूको कुमनोवाञ्छाको अनुसरण गर्‍यौं भने अल्लाहको तर्फबाट न तिम्रो कुनै मित्र हुनेछ न सहयोगी ।

الَّذِينَ آتَيْنَاهُمُ الْكِتَابَ يَتْلُونَهُ حَقَّ تِلَاوَتِهِ أُولَٰئِكَ يُؤْمِنُونَ بِهِ ۗ وَمَن يَكْفُرْ بِهِ فَأُولَٰئِكَ هُمُ الْخَاسِرُونَ ﴿١٢١﴾

१२२.ती व्यक्तिहरू जसलाई हामीले पुस्तक प्रदान गरेका छौं तिनीहरू त्यसको यथोचित अनुसरण गर्छन् तथा त्यसप्रति विश्वास गर्छन् । तथा जसले त्यसप्रति अविश्वास गर्छन् तिनीहरूले नै नोक्सान भोग्नेछन् ।

يَا بَنِي إِسْرَائِيلَ اذْكُرُوا نِعْمَتِيَ الَّتِي أَنْعَمْتُ عَلَيْكُمْ وَأَنِّي فَضَّلْتُكُمْ عَلَى الْعَالَمِينَ ﴿١٢٢﴾

१२३.हे इजराईलका सन्तान हो ! मैले तिमीहरूप्रति गरिसकेको अनुग्रहलाई स्मरण गर । तथा मैले तिमीहरूलाई सम्पुर्ण मानिसहरूमाथि जुन प्राध्यान्यता

प्रदान गरेको थिएँ त्यसलाई (पनि) ।

وَاتَّقُوْا يَوْمًا لَّا تَجْزِيْ نَفْسٌ عَنْ نَّفْسٍ
شَيْـًٔا وَّلَا يُقْبَلُ مِنْهَا عَدْلٌ وَّلَا تَنْفَعُهَا
شَفَاعَةٌ وَّلَا هُمْ يُنْصَرُوْنَ ۝١٢٣

१२४.तथा त्यस दिनसित डराऊ जब कुनै आत्मा अन्य कुनै आत्माका निम्ति विकल्प हुन सक्नेछैन, तथा त्यसबाट न कुनै प्रकारको क्षतिपूर्ति ग्रहण गरिनेछ, न कुनै सिफारिसले उसलाई लाभ दिनेछ, तथा न त तिनीहरूलाई सहयोग गरिनेछ

وَاِذِ ابْتَلٰٓى اِبْرٰهٖمَ رَبُّهٗ بِكَلِمٰتٍ
فَاَتَمَّهُنَّ ؕ قَالَ اِنِّىْ جَاعِلُكَ لِلنَّاسِ
اِمَامًا ؕ قَالَ وَمِنْ ذُرِّيَّتِىْ ؕ قَالَ لَا يَنَالُ
عَهْدِى الظّٰلِمِيْنَ ۝١٢٤

१२५.तथा (स्मरण गर) जब इब्राहिमलाई उनका प्रतिपालकले केही आदेशहरूद्वारा परीक्षण गरेका थिए जसलाई उनले पूर्ण गरिछाडे । उनले भने, "म तिमीलाई मानवजातिको निम्ति धर्मगुरु बनाउने छु ।" (इब्राहिमले) सोधे, "अनि मेरा सन्तानहरूबाट पनि?" उनले भने, "मेरो वचनले अत्याचारी-हरूलाई आवद्धित गर्नेछैन ।"

وَاِذْ جَعَلْنَا الْبَيْتَ مَثَابَةً لِّلنَّاسِ
وَاَمْنًا ؕ وَاتَّخِذُوْا مِنْ مَّقَامِ اِبْرٰهٖمَ
مُصَلًّى ؕ وَعَهِدْنَآ اِلٰٓى اِبْرٰهٖمَ وَ
اِسْمٰعِيْلَ اَنْ طَهِّرَا بَيْتِىَ لِلطَّآئِفِيْنَ
وَالْعٰكِفِيْنَ وَالرُّكَّعِ السُّجُوْدِ ۝١٢٥

१२६.तथा (त्यस समयको स्मरण गर) जब हामीले त्यस घरलाई मानवजातिका निम्ति एकत्रित हुने ठाउँ तथा एक सुरक्षित (स्थान) बनाएका थियौं । तथा इब्राहिमले उभिने गरेको ठाउँलाई तिमीहरूले नमाज पढ्ने स्थान बनाऊ । तथा हामीले इब्राहिमलाई र इस्माइललाई (के) आदेश दिएका (थियौं) भने, "मेरो घरलाई ती व्यक्तिहरूका निम्ति पवित्र राख जसले त्यसको परिक्रमा गर्छन् तथा जसले विशेष उपासनाका निम्ति (त्यसभित्र) आफूलाई आवद्ध राख्छन् तथा तिनका निम्ति जसले झुक्ने र साष्टाङ्ग दण्डवत (साथ प्रार्थना) गर्ने गर्छन् ।

وَاِذْ قَالَ اِبْرٰهٖمُ رَبِّ اجْعَلْ هٰذَا بَلَدًا
اٰمِنًا وَّارْزُقْ اَهْلَهٗ مِنَ الثَّمَرٰتِ مَنْ
اٰمَنَ مِنْهُمْ بِاللّٰهِ وَالْيَوْمِ الْاٰخِرِ ؕ قَالَ وَ

१२७.तथा (स्मरण गर) जब इब्राहिमले भनेका थिए, "हे मेरा प्रतिपालक ! यस नगरलाई शान्तिस्थान बनाउ तथा यहाँका बासिन्दाहरूमध्ये जसले अल्लाहप्रति तथा अन्तिम दिनप्रति विश्वास गर्छन् तिनी-हरूलाई फलाहार प्रदान गर ।" उनले

مَنْ كَفَرَ فَأُمَتِّعُهُۥ قَلِيلًا ثُمَّ أَضْطَرُّهُۥٓ إِلَىٰ عَذَابِ ٱلنَّارِ ۖ وَبِئْسَ ٱلْمَصِيرُ ﴿١٢٦﴾

भने "परन्तु जुन व्यक्तिले अविश्वास गर्नेछ त्यसलाई पनि केही समयका निम्ति लाभान्वित गर्नेछु; त्यसपछि त्यसलाई अग्निको दण्ड भोग्न वाध्य गर्नेछु र त्यो अति निकृष्ट गन्तव्यस्थान हो ।"

وَإِذْ يَرْفَعُ إِبْرَٰهِـۧمُ ٱلْقَوَاعِدَ مِنَ ٱلْبَيْتِ وَإِسْمَٰعِيلُ رَبَّنَا تَقَبَّلْ مِنَّآ ۖ إِنَّكَ أَنتَ ٱلسَّمِيعُ ٱلْعَلِيمُ ﴿١٢٧﴾

१२८.(त्यस समयको स्मरण गर) जब इब्राहिम र इस्माइलले (के प्रार्थना) गर्दै घरको जग उठाइरहेका थिए (भने), "हे हाम्रा प्रतिपालक, हामीबाट (यो) स्वीकार गर, वास्तवमा तिमी नै सर्वश्रोता, सर्वज्ञ हौ ।"

رَبَّنَا وَٱجْعَلْنَا مُسْلِمَيْنِ لَكَ وَمِن ذُرِّيَّتِنَآ أُمَّةً مُّسْلِمَةً لَّكَ وَأَرِنَا مَنَاسِكَنَا وَتُبْ عَلَيْنَآ ۖ إِنَّكَ أَنتَ ٱلتَّوَّابُ ٱلرَّحِيمُ ﴿١٢٨﴾

१२९."हे हाम्रा प्रतिपालक । हामीलाई आफूतर्फ समर्पित बनाउ तथा हाम्रा सन्तानहरूबाट पनि एउटा समूहरूलाई आफ्नो आज्ञाकारी बनाऊ । तथा हामीलाई हाम्रो उपासनाको मार्ग देखाऊ, तथा कृपापुर्वक हामीतर्फ दृष्टि गर, किनकि तिमी बारम्बार (कृपा) दृष्टिकर्ता, अति दयावान छौ ।

رَبَّنَا وَٱبْعَثْ فِيهِمْ رَسُولًا مِّنْهُمْ يَتْلُوا۟ عَلَيْهِمْ ءَايَٰتِكَ وَيُعَلِّمُهُمُ ٱلْكِتَٰبَ وَٱلْحِكْمَةَ وَيُزَكِّيهِمْ ۚ إِنَّكَ أَنتَ ٱلْعَزِيزُ ٱلْحَكِيمُ ﴿١٢٩﴾

१३०."तथा हे हाम्रा प्रतिपालक ! तिनीहरूमा तिनीहरूबाट नै एकजना यस्ता सन्देशवाहक अविर्भाव गर जसले तिनीहरूलाई तिम्रा निर्देशनहरू पाठ गरेर सुनाउन तथा तिनीहरूलाई किताब र तथ्यज्ञान सिकाउन तथा तिनीहरूलाई पवित्र तुल्याउन, वस्तुतः तिमी नै परम पराक्रमी, परम ज्ञानी हौ ।

وَمَن يَرْغَبُ عَن مِّلَّةِ إِبْرَٰهِـۧمَ إِلَّا مَن سَفِهَ نَفْسَهُۥ ۚ وَلَقَدِ ٱصْطَفَيْنَٰهُ فِى ٱلدُّنْيَا ۖ وَإِنَّهُۥ فِى ٱلْـَٔاخِرَةِ لَمِنَ ٱلصَّٰلِحِينَ ﴿١٣٠﴾

१३१.जसले आफ्नो हृदयलाई धोका दिएको छ त्यो व्यक्तिबाहेक इब्राहिमको धर्मबाट अरू को विमुख हुनसक्छ? निश्चय नै उनलाई हामीले यस संसारमा पनि रोजेका थियौं तथा परलोकमा पनि उनी धर्मपरायण व्यक्तिहरूमध्ये हुनेछन् ।

إِذْ قَالَ لَهُۥ رَبُّهُۥٓ أَسْلِمْ ۖ قَالَ أَسْلَمْتُ لِرَبِّ ٱلْعَٰلَمِينَ ﴿١٣١﴾

१३२.जब उनका प्रतिपालकले उनलाई भने, "तिमी आत्मसमर्पण गर", तब उनले भने, "मैले सम्पूर्ण ब्रह्माण्डका प्रतिपालकसमक्ष आत्मसमर्पण गरिसकेको

छु ।

१३३.तथा इब्राहिमले त्यसको आदेश आफ्ना पुत्रहरूलाई र (त्यसैगरी) याकूबले (के भन्दै) दिए भने– "हे मेरा पुत्र हो, निश्चय नै अल्लाहले यस धर्मलाई तिमीहरूका निम्ति रोजेका छन्, त्यसकारण पूर्ण आत्मसमर्पित रहेको अवस्थामा बाहेक तिमीहरूको मृत्यु नहोस्

وَوَصّٰى بِهَآ اِبْرٰهٖمُ بَنِيْهِ وَيَعْقُوْبُ ؕ يٰبَنِيَّ
اِنَّ اللّٰهَ اصْطَفٰى لَكُمُ الدِّيْنَ فَلَا
تَمُوْتُنَّ اِلَّا وَاَنْتُمْ مُّسْلِمُوْنَ ﴿١٣٢﴾

१३४.के त्यससमय तिमीहरू उपस्थित थियौ जब याकूब मरणासन्न अवस्थामा थिए? जब उनले आफ्ना पुत्रहरूलाई भने- "म गएपश्चात् तिमीहरूले कसको उपासना गर्नेछौ?" उनीहरूले उत्तर दिए "हामी तिम्रा अल्लाह, तिम्रा पितृहरू इब्राहिम, इस्माईल तथा इस्हाकका अल्लाहको, जो एकमात्र उपास्य छन्, उनैको उपासना गर्नेछौं, तथा हामी उनीप्रति नै आत्मसमर्पित छौं ।"

اَمْ كُنْتُمْ شُهَدَآءَ اِذْ حَضَرَ يَعْقُوْبَ
الْمَوْتُ ۙ اِذْ قَالَ لِبَنِيْهِ مَا تَعْبُدُوْنَ مِنْ
بَعْدِيْ ؕ قَالُوْا نَعْبُدُ اِلٰهَكَ وَاِلٰهَ
اٰبَآئِكَ اِبْرٰهٖمَ وَاِسْمٰعِيْلَ وَاِسْحٰقَ
اِلٰهًا وَّاحِدًا ۖۚ وَّنَحْنُ لَهٗ مُسْلِمُوْنَ ﴿١٣٣﴾

१३५.त्यो यस्तो जमात हो जसको अवसान भइसक्यो, उनीहरूले जे आर्जन गरे त्यो तिनीहरूका निम्ति तथा तिमीहरूले जे कमाउनेछौ त्यो तिमीहरूका निम्ति हुनेछ । तथा तिनीहरूले जुन कार्यहरू गरेका थिए त्यसबारे तिमीहरूलाई प्रश्न गरिनेछैन ।

تِلْكَ اُمَّةٌ قَدْ خَلَتْ ۚ لَهَا مَا كَسَبَتْ
وَلَكُمْ مَّا كَسَبْتُمْ ۚ وَلَا تُسْـَٔلُوْنَ عَمَّا
كَانُوْا يَعْمَلُوْنَ ﴿١٣٤﴾

१३६.तथा तिनीहरू भन्छन्: "तिमीहरू यहुदी बन अथवा इसाई बन तिमीहरूलाई सन्मार्ग प्राप्त हुनेछ ।" तिमी भन: "होइन, बरु इब्राहिमको धर्म (अवलम्बन गर), जो सदा (अल्लाहप्रति) नतमस्तक रहने गर्थे, तथा उनी अनेकाश्वरवादीहरूमध्ये थिएनन् ।

وَقَالُوْا كُوْنُوْا هُوْدًا اَوْ نَصٰرٰى تَهْتَدُوْا ؕ
قُلْ بَلْ مِلَّةَ اِبْرٰهٖمَ حَنِيْفًا ؕ وَ
مَا كَانَ مِنَ الْمُشْرِكِيْنَ ﴿١٣٥﴾

१३७.तिमीहरू भन: "हामी अल्लाहप्रति तथा कुरा त्यसप्रति जुन हामीमा अवतीर्ण गरिएको छ, तथा जुन इब्राहिम, र

قُوْلُوْٓا اٰمَنَّا بِاللّٰهِ وَمَآ اُنْزِلَ اِلَيْنَا وَمَآ
اُنْزِلَ اِلٰٓى اِبْرٰهٖمَ وَاِسْمٰعِيْلَ وَاِسْحٰقَ

इस्माइल र इस्हाक र याकूब तथा - उनका) सन्ततिप्रति अवतीर्ण गरिएको थियो, तथा मूसा र इसालाई जुन कुरा प्रदान गरिएको थियो, तथा (अन्य सबै) नबीहरूलाई जुन कुरा उनका प्रतिपालकका तर्फबाट प्रदान गरिएको थियो, त्यसप्रति विश्वास गर्छौं । तिनीहरूमध्ये कसैप्रति हामी कुनै भेदभाव राख्दैनौं, तथा उनीप्रति नै हामी आत्मसमर्पित छौं ।"

وَيَعْقُوبَ وَالْأَسْبَاطِ وَمَا أُوتِيَ مُوسَىٰ وَعِيسَىٰ وَمَا أُوتِيَ النَّبِيُّونَ مِن رَّبِّهِمْ لَا نُفَرِّقُ بَيْنَ أَحَدٍ مِّنْهُمْ وَنَحْنُ لَهُ مُسْلِمُونَ ﴿١٣٦﴾

१३८.तथा तिमीहरूले जसरी विश्वास गरेका छौ त्यसरी नै यदि तिनीहरूले पनि विश्वास गरे भने निश्चय नै तिनीहरूले सन्मार्ग प्राप्त गरे । परन्तु यदि तिनीहरू विमुख भए भने तिनीहरूले केवल मतभेद उत्पन्न गर्दैछन् यस अवस्थामा तिनीहरू-विरुद्ध अल्लाह नै तिम्रा निम्ति प्रर्याप्त हुनेछन्, कारण उनी नै परमश्रोता, सर्वज्ञ हुन् ।

فَإِنْ آمَنُوا بِمِثْلِ مَا آمَنتُم بِهِ فَقَدِ اهْتَدَوا ۖ وَّإِن تَوَلَّوْا فَإِنَّمَا هُمْ فِي شِقَاقٍ ۖ فَسَيَكْفِيكَهُمُ اللَّهُ ۚ وَهُوَ السَّمِيعُ الْعَلِيمُ ﴿١٣٧﴾

१३९.(तिमी भन: "हामी) अल्लाहको धर्म* (अवलम्बन गर्छौं;) तथा धर्म (को दीक्षा दिन)मा अल्लाहभन्दा उत्तम अरू को नै हुनसक्छ र? तथा हामी उनकै उपासक हौं ।

صِبْغَةَ اللَّهِ ۖ وَمَنْ أَحْسَنُ مِنَ اللَّهِ صِبْغَةً ۖ وَنَحْنُ لَهُ عَابِدُونَ ﴿١٣٨﴾

१४०.तिमी भन: "के तिमीहरू अल्लाहका सम्बन्धमा हामीसित विवाद गर्छौ, जबकि उनी नै हाम्रा तथा तिमीहरूका पनि प्रतिपालक हुन्? तथा हाम्रा कार्यहरू हाम्रा निम्ति र तिमीहरूका कार्यहरू तिमीहरूका निम्ति हुन्," तथा हामी त उनीप्रति नै निष्कपटताका साथ समर्पित छौं ।"

قُلْ أَتُحَاجُّونَنَا فِي اللَّهِ وَهُوَ رَبُّنَا وَرَبُّكُمْ وَلَنَا أَعْمَالُنَا وَلَكُمْ أَعْمَالُكُمْ وَنَحْنُ لَهُ مُخْلِصُونَ ﴿١٣٩﴾

१४१.के इब्राहिम, तथा इस्माईल तथा इस्हाक तथा याकूब र उनका सन्ततिहरू यहुदी अथवा इसाई थिए भनी तिमीहरू

أَمْ تَقُولُونَ إِنَّ إِبْرَاهِيمَ وَإِسْمَاعِيلَ وَإِسْحَاقَ وَيَعْقُوبَ وَالْأَسْبَاطَ كَانُوا

* अल्लाहको धर्म भन्नाले अल्लाहले कुनै अनुसरण गर्छन् भन्ने कुरा बुझाउँदैन । त्यसको अर्थ केवल अल्लाहले अवतीर्ण गरेको धर्म हो ।

هُوۡدًا اَوۡ نَصٰرٰى ؕ قُلۡ ءَاَنۡتُمۡ اَعۡلَمُ اَمِ اللّٰهُ ؕ وَمَنۡ اَظۡلَمُ مِمَّنۡ كَتَمَ شَهَادَةً عِنۡدَهٗ مِنَ اللّٰهِ ؕ وَمَا اللّٰهُ بِغَافِلٍ عَمَّا تَعۡمَلُوۡنَ ﴿١٤٠﴾

भन्छौ? तिमी भन, "के तिमीहरू अधिक जान्दछौ अथवा अल्लाह?" तथा त्यो व्यक्तिभन्दा ठूलो अन्यायी अरू को हुनसक्छ र जसले अल्लाहका तर्फबाट उसलाई प्राप्त भएको साक्षीलाई लुकाउँछ तथा अल्लाह तिमीहरूका कार्यहरूप्रति अविदित छैनन् ।

تِلۡكَ اُمَّةٌ قَدۡ خَلَتۡ ۚ لَهَا مَا كَسَبَتۡ وَلَكُمۡ مَّا كَسَبۡتُمۡ ۚ وَلَا تُسۡـَٔلُوۡنَ عَمَّا كَانُوۡا يَعۡمَلُوۡنَ ﴿١٤١﴾

१४२.यी ती जमातहरू हुन् जसको अवसान भइसक्यो, तिनीहरूले जे कमाए तिनीहरूले नै भोग्नेछन् तथा तिमीहरूले जे कमायौ तिमीहरूले भोग्नेछौ, तथा तिनीहरूले गरेका कार्यहरूबारे तिमीहरूलाई प्रश्न गरिनेछैन ।

سَيَقُوۡلُ السُّفَهَآءُ مِنَ النَّاسِ مَا وَلّٰٮهُمۡ عَنۡ قِبۡلَتِهِمُ الَّتِىۡ كَانُوۡا عَلَيۡهَا ؕ قُلۡ لِّلّٰهِ الۡمَشۡرِقُ وَالۡمَغۡرِبُ ؕ يَهۡدِىۡ مَنۡ يَّشَآءُ اِلٰى صِرَاطٍ مُّسۡتَقِيۡمٍ ﴿١٤٢﴾

१४३.अबोध व्यक्तिहरूले निश्चय नै के भन्नेछन् भने "तिनीहरूलाई आफ्नो किब्लाबाट (दिशाबाट) जसको तिनीहरू अनुसरण गर्थे कुन वस्तुले विमुख गरायो?" तिमी भन: "पूर्व र पश्चिम अल्लाहकै हुन् । उनले जसलाई चाहन्छन् उसलाई सन्मार्गतर्फ उन्मुख गराउँछन् ।"

وَكَذٰلِكَ جَعَلۡنٰكُمۡ اُمَّةً وَّسَطًا لِّتَكُوۡنُوۡا شُهَدَآءَ عَلَى النَّاسِ وَيَكُوۡنَ الرَّسُوۡلُ عَلَيۡكُمۡ شَهِيۡدًا ؕ وَمَا جَعَلۡنَا الۡقِبۡلَةَ الَّتِىۡ كُنۡتَ عَلَيۡهَآ اِلَّا لِنَعۡلَمَ مَنۡ يَّتَّبِعُ الرَّسُوۡلَ مِمَّنۡ يَّنۡقَلِبُ عَلٰى عَقِبَيۡهِ ؕ وَاِنۡ كَانَتۡ لَكَبِيۡرَةً اِلَّا عَلَى الَّذِيۡنَ هَدَى اللّٰهُ ؕ وَمَا كَانَ اللّٰهُ لِيُضِيۡعَ اِيۡمَانَكُمۡ ؕ اِنَّ اللّٰهَ بِالنَّاسِ لَرَءُوۡفٌ رَّحِيۡمٌ ﴿١٤٣﴾

१४४.तथा यसै प्रकार हामीले तिमीहरूलाई एउटा मर्यादी जाति बनायौं ताकि तिमीहरू मानिसहरूका निरीक्षक बन, तथा यी (अल्लाहका) सन्देशवाहक तिमीहरूका निरीक्षक बनून् । तथा जुन किब्लाको तिमी अनुसरण गर्ने गर्‍यौं त्यसलाई हामीले केवल यस (अल्लाहको) का सन्देशवाहकको आज्ञापालन गर्ने व्यक्तिलाई विमुख हुने व्यक्तिको तुलनामा चिन्नका निम्ति निर्धारित गरेका थियौं । तथा अल्लाहले जसलाई सन्मार्ग देखाएका छन् तिनीहरूबाहेक अरूका निम्ति यो कुरो निश्चय नै कठिन छ । तथा अल्लाहले कदापि तिमीहरूको विश्वास नष्ट गर्नेछैनन् । निश्चय नै अल्लाह मानव-जातिप्रति अति कृपालु र दयालु छन् ।

قَدْ نَرَىٰ تَقَلُّبَ وَجْهِكَ فِي السَّمَاءِ ۖ فَلَنُوَلِّيَنَّكَ قِبْلَةً تَرْضَاهَا ۚ فَوَلِّ وَجْهَكَ شَطْرَ الْمَسْجِدِ الْحَرَامِ ۚ وَحَيْثُ مَا كُنتُمْ فَوَلُّوا وُجُوهَكُمْ شَطْرَهُ ۗ وَإِنَّ الَّذِينَ أُوتُوا الْكِتَابَ لَيَعْلَمُونَ أَنَّهُ الْحَقُّ مِن رَّبِّهِمْ ۗ وَمَا اللَّهُ بِغَافِلٍ عَمَّا يَعْمَلُونَ ﴿١٤٥﴾

१४५.तिमीले बारम्बार आकाशतर्फ मुख गरेको हामी देखिरहेछौं, त्यसकारण निश्चय नै हामी तिमीलाई त्यस किब्लातर्फ फर्काउनेछौं जसलाई तिमीले मनपराउँछौं । अतः तिमी आफ्नो मुख पवित्र मस्जिदतर्फ फर्काऊ । तथा तिमीहरू जहाँ छौ त्यस (मस्जिद) तर्फ आफ्नो मुख फर्काउने गर । तथा ती व्यक्तिहरू जसलाई किताब दिइएको छ तिनीहरूले यो कुरो अल्लाहका तर्फबाट नितान्त सत्य हो भनी जान्दछन् । तथा तिनीहरूका कार्यहरूप्रति अल्लाह अविदित छैनन् ।

وَلَئِنْ أَتَيْتَ الَّذِينَ أُوتُوا الْكِتَابَ بِكُلِّ آيَةٍ مَّا تَبِعُوا قِبْلَتَكَ ۚ وَمَا أَنتَ بِتَابِعٍ قِبْلَتَهُمْ ۚ وَمَا بَعْضُهُم بِتَابِعٍ قِبْلَةَ بَعْضٍ ۚ وَلَئِنِ اتَّبَعْتَ أَهْوَاءَهُم مِّن بَعْدِ مَا جَاءَكَ مِنَ الْعِلْمِ ۙ إِنَّكَ إِذًا لَّمِنَ الظَّالِمِينَ ﴿١٤٦﴾

१४६.तथा जुन व्यक्तिहरूलाई किताब दिइएको छ यदि तिमीले तिनीहरूसमक्ष प्रत्येक चिह्नहरू प्रस्तुत गर्‍यौ भने पनि तिनीहरूले कदापि तिम्रो किब्लाको अनुसरण गर्नेछैनन्", न ता तिमीले तिनीहरूको किब्लाको अनुसरण गर्न सक्नेछौ । तथा न तिनीहरूमध्ये केहीले अन्य केहीको किब्लाको अनुसरण गर्नेछ । तथा यदि तिमीसमक्ष ज्ञानको आगमनपश्चात् (पनि) तिमीले तिनीहरूको मनोवाञ्छाको अनुसरण गर्‍यौ भने तिमी निश्चय नै अन्यायकारी-हरूमध्ये गनिनेछौ

الَّذِينَ آتَيْنَاهُمُ الْكِتَابَ يَعْرِفُونَهُ كَمَا يَعْرِفُونَ أَبْنَاءَهُمْ ۖ وَإِنَّ فَرِيقًا مِّنْهُمْ لَيَكْتُمُونَ الْحَقَّ وَهُمْ يَعْلَمُونَ ﴿١٤٧﴾

१४७.ती व्यक्तिहरू जसलाई हामीले किताब प्रदान गरेका छौं तिनीहरूले त्यसलाई* (त्यस सत्य अनुरूप नै ) चिन्दछन्, जसरी तिनीहरूको आफ्ना पुत्रहरूलाई चिन्दछन्,

---

* (त्यस) भन्ने शब्दले साधारणतया सत्यका ती चिह्नहरूलाई दर्शाउँछ जुन तिनीहरूले पवित्र नबी (उनीप्रति शान्ति होस्) को आचरणमा अवलोकन गर्छन् । उनी अल्लाहीय व्यक्ति हुन् भन्ने कुराको त्यही नै प्रमाण हो किनभने उनी अल्लाहका गुणहरू प्रदर्शन गर्छन् । जसरी तिनीहरूले आफ्ना पुत्रहरूलाई चिह्नहरूद्वारा चिन्दछन् तथा तिनीहरूमाथि आफ्नो चरित्रको छाप छोड्छन् र त्यसैद्वारा उनीहरू वस्तुतः तिनीहरूकै हुन् भनी चिन्दछन्, त्यसै प्रकार एकजना अल्लाहको मानिस अल्लाहका ती गुणहरूद्वारा चिनिन्छ जुन उसको आचरण र जीवनको मार्गमा प्रदर्शित हुन्छन् ।

तर तिनीहरूमध्ये केही व्यक्तिहरू भने सत्यलाई जानीबुझीकन लुकाउँछन् ।

الْحَقُّ مِنْ رَّبِّكَ فَلَا تَكُوْنَنَّ مِنَ الْمُمْتَرِيْنَ ﴿١٤٨﴾

१४८.यो सत्य तिम्रा प्रतिपालकका तर्फबाट (आएको) हो त्यसकारण तिमी **व्यक्तिहरूमध्ये नबन ।**

وَلِكُلٍّ وِّجْهَةٌ هُوَ مُوَلِّيْهَا فَاسْتَبِقُوا الْخَيْرٰتِ ۗ اَيْنَ مَا تَكُوْنُوْا يَاْتِ بِكُمُ اللّٰهُ جَمِيْعًا ۗ اِنَّ اللّٰهَ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ﴿١٤٩﴾

१४९.तथा प्रत्येक व्यक्तिको एउटा लक्ष हुन्छ जसप्रति उसको ध्यान केन्द्रित हुन्छ, अत: तिमीहरू पुण्यकार्यमा परस्पर (प्रतिस्पर्धा) गर्दै अघि बढ्ने प्रयत्न गर । तिमीहरू जहाँ भएता पनि, अल्लाहले तिमीहरूलाई एकत्रित गरी ल्याउनेछन् । निश्चय नै, अल्लाहमा आफूले इच्छा गरेका सम्पुर्ण कार्यहरू गर्ने सामार्थ्य छ ।

وَمِنْ حَيْثُ خَرَجْتَ فَوَلِّ وَجْهَكَ شَطْرَ الْمَسْجِدِ الْحَرَامِ ۗ وَاِنَّهٗ لَلْحَقُّ مِنْ رَّبِّكَ ۗ وَمَا اللّٰهُ بِغَافِلٍ عَمَّا تَعْمَلُوْنَ ﴿١٥٠﴾

१५०.तथा तिमी जहाँबाट पनि निस्कन्छौ आफ्नो मुहार पवित्र मस्जिदतर्फ फर्काऊ तथा यो निश्चय नै तिम्रा प्रतिपालकका तर्फबाट आएको सत्य हो, तथा तिमीहरूका कार्यहरूप्रति अल्लाह अविदित छैनन् ।

وَمِنْ حَيْثُ خَرَجْتَ فَوَلِّ وَجْهَكَ شَطْرَ الْمَسْجِدِ الْحَرَامِ ۗ وَحَيْثُ مَا كُنْتُمْ فَوَلُّوْا وُجُوْهَكُمْ شَطْرَهٗ ۙ لِئَلَّا يَكُوْنَ لِلنَّاسِ عَلَيْكُمْ حُجَّةٌ ۙ اِلَّا الَّذِيْنَ ظَلَمُوْا مِنْهُمْ ۙ فَلَا تَخْشَوْهُمْ وَاخْشَوْنِيْ ۙ وَلِاُتِمَّ نِعْمَتِيْ عَلَيْكُمْ وَلَعَلَّكُمْ تَهْتَدُوْنَ ﴿١٥١﴾

१५१.तथा जहाँबाट पनि तिमी निस्कन्छौ आफ्नो मुहार पवित्र मस्जिदतर्फ फर्काउ तथा तिमीहरू जहाँ रहे तापनि आफ्नो मुहार त्यसतर्फ फर्काऊ, ताकि तिनीहरूमध्ये अन्यायकारीहरूबाहेक (अन्य) मानिसहरूले तिमीहरूप्रति आरोप लगाउन नसकून् । अत: तिनीहरूप्रति डर नराख, तर म प्रति डर राख, ताकि म आफ्नो अनुग्रह तिमीहरूप्रति पूर्ण गर्न सकूँ तथा तिमीहरू सन्मार्ग प्राप्त गर्न सक ।

كَمَآ اَرْسَلْنَا فِيْكُمْ رَسُوْلًا مِّنْكُمْ يَتْلُوْا عَلَيْكُمْ اٰيٰتِنَا وَيُزَكِّيْكُمْ وَيُعَلِّمُكُمُ الْكِتٰبَ وَالْحِكْمَةَ وَيُعَلِّمُكُمْ مَّا لَمْ تَكُوْنُوْا تَعْلَمُوْنَ ﴿١٥٢﴾

१५२.जस्तै हामीले तिमीहरूसमक्ष तिमीहरू-बाट नै एकजना सन्देशवाहक पठाएका छौं जसले तिमीहरूलाई हाम्रो निर्देशन पाठ गरेर सुनाउँछन् तथा तिमीहरूलाई पवित्र तुल्याउँछन् तथा तिमीहरूलाई किताब र तथ्यज्ञान सिकाउँछन, तथा तिमीहरूलाई ती सबै

कुरा सिकाउँछन् जसको ज्ञान तिमीहरूमा पहिला थिएन ।

فَاذْكُرُونِي أَذْكُرْكُمْ وَاشْكُرُوا لِي وَلَا تَكْفُرُونِ ﴿١٥٢﴾

१५३.त्यसकारण तिमीहरू मलाई स्मरण गर म (पनि) तिमीहरूलाई स्मरण गर्नेछु । मप्रति कृतज्ञ बन तथा मेरा कृतघ्न नबन ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا اسْتَعِينُوا بِالصَّبْرِ وَالصَّلَاةِ ۚ إِنَّ اللَّهَ مَعَ الصَّابِرِينَ ﴿١٥٣﴾

१५४.हे विश्वासीजन हो । धैर्य तथा प्रार्थनाका साथ सहायता याचना गर; निश्चय नै अल्लाह धैर्यवानहरूसित रहेका छन् ।

وَلَا تَقُولُوا لِمَنْ يُقْتَلُ فِي سَبِيلِ اللَّهِ أَمْوَاتٌ ۚ بَلْ أَحْيَاءٌ وَلَٰكِنْ لَا تَشْعُرُونَ ﴿١٥٤﴾

१५५.तथा जुन व्यक्तिहरू अल्लाहका मार्गमा हताहत हुन्छन्, तिनीहरू मृत हुन् भनी नभन, होइन, (अपितु) तिनीहरू जीवित छन् तर तिमीहरू बुझ्दैनौ ।

وَلَنَبْلُوَنَّكُمْ بِشَيْءٍ مِنَ الْخَوْفِ وَالْجُوعِ وَنَقْصٍ مِنَ الْأَمْوَالِ وَالْأَنْفُسِ وَالثَّمَرَاتِ ۗ وَبَشِّرِ الصَّابِرِينَ ﴿١٥٥﴾

१५६.तथा निश्चय नै तिमीहरूलाई हामी केही डर, भोक तथा ज्यान-माल र फलको हानिद्वारा जाँच्नेछौं । अत: तिमी धैर्यधारीहरूलाई शुभ-सन्देश सुनाऊ ।

الَّذِينَ إِذَا أَصَابَتْهُمْ مُصِيبَةٌ قَالُوا إِنَّا لِلَّهِ وَإِنَّا إِلَيْهِ رَاجِعُونَ ﴿١٥٦﴾

१५७.ती व्यक्तिहरू जसमाथि जव कुनै सङ्कट आइपर्छ तव के भन्छन् भने "हामी अल्लाहकै हौं तथा उनीतर्फै फर्कनेछौं ।"

أُولَٰئِكَ عَلَيْهِمْ صَلَوَاتٌ مِنْ رَبِّهِمْ وَرَحْمَةٌ ۖ وَأُولَٰئِكَ هُمُ الْمُهْتَدُونَ ﴿١٥٧﴾

१५८.यिनै व्यक्तिहरूमाथि तिनीहरूका प्रतिपालकको वरदान तथा कृपा रहेको छ तथा यिनीहरू नै सन्मार्ग प्राप्त व्यक्तिहरू हुन् ।

إِنَّ الصَّفَا وَالْمَرْوَةَ مِنْ شَعَائِرِ اللَّهِ ۖ فَمَنْ حَجَّ الْبَيْتَ أَوِ اعْتَمَرَ فَلَا جُنَاحَ عَلَيْهِ أَنْ يَطَّوَّفَ بِهِمَا ۚ وَمَنْ تَطَوَّعَ خَيْرًا فَإِنَّ اللَّهَ شَاكِرٌ عَلِيمٌ ﴿١٥٨﴾

१५९.निश्चय नै 'सफा' तथा 'मरवा' अल्लाहका चिह्नहरू हुन् । त्यसकारण जुन व्यक्तिले यस घरको हज अथवा उम्रा गर्छ, यदि ती दुई स्थानको परिक्रमा उसले गरेमा कुनै पाप हुनेछैन । तथा जुन व्यक्तिले स्वेच्छापूर्वक कुनै पुण्यकार्य गर्छ, निश्चय नै अल्लाह गुणग्राही, सर्वज्ञ छन् ।

إِنَّ الَّذِينَ يَكْتُمُونَ مَا أَنْزَلْنَا مِنَ الْبَيِّنَاتِ وَالْهُدَىٰ مِنْ بَعْدِ مَا بَيَّنَّاهُ

१६०.ती व्यक्तिहरू, जसले हामीले अवतीर्ण गरेका चिह्नहरूलाई तथा मार्गदर्शनलाई हामीले यस किताबमा

لِلنَّاسِ فِي الْكِتٰبِ ۙ أُولٰٓئِكَ يَلْعَنُهُمُ
اللّٰهُ وَيَلْعَنُهُمُ اللّٰعِنُوْنَ ﴿١٦٠﴾

स्पष्टरूपले मानिस-हरूका निम्ति वर्णन गरेपश्चात् (पनि) लुकाउँछन्, तिनै व्यक्तिहरू हुन् जसलाई अल्लाहले श्राप दिन्छन् तथा श्राप दिने व्यक्तिहरूले पनि तिनीहरूलाई श्राप दिन्छन् ।

إِلَّا الَّذِيْنَ تَابُوْا وَأَصْلَحُوْا وَبَيَّنُوْا
فَأُولٰٓئِكَ أَتُوْبُ عَلَيْهِمْ ۚ وَأَنَا التَّوَّابُ
الرَّحِيْمُ ﴿١٦١﴾

१६१.तर ती व्यक्तिहरू जसले प्रायश्चित्त तथा आत्मसंस्कार गरे, अनि (सत्यलाई) स्पष्टरूपले वर्णन गरे, तिनीहरूप्रति म कृपादृष्टि गर्नेछु, तथा म बारम्बार कृपादृष्टिकर्ता, परम दयालु छु ।

إِنَّ الَّذِيْنَ كَفَرُوْا وَمَاتُوْا وَهُمْ كُفَّارٌ
أُولٰٓئِكَ عَلَيْهِمْ لَعْنَةُ اللّٰهِ وَالْمَلٰٓئِكَةِ
وَالنَّاسِ أَجْمَعِيْنَ ﴿١٦٢﴾

१६२.ती व्यक्तिहरू जसले अविश्वास गरे तथा विश्वासरहित अवस्थामा नै तिनीहरूको मृत्यु भयो, त्यस्ता व्यक्तिहरूमाथि अल्लाहको, फरिस्ता-हरूको तथा मानिसहरू सबैको श्राप पर्नेछ ।

خٰلِدِيْنَ فِيْهَا ۚ لَا يُخَفَّفُ عَنْهُمُ
الْعَذَابُ وَلَا هُمْ يُنْظَرُوْنَ ﴿١٦٣﴾

१६३.तिनीहरू त्यही अवस्थामा रहनेछन् । तिनीहरूको दण्ड घटाइनेछैन, न तिनीहरूलाई छुट्कारा नै दिइनेछ ।

وَإِلٰهُكُمْ إِلٰهٌ وَّاحِدٌ ۚ لَآ إِلٰهَ إِلَّا هُوَ الرَّحْمٰنُ
الرَّحِيْمُ ﴿١٦٤﴾

१६४.तथा तिमीहरूका उपास्य केवल एक उपास्य हुन्, उनीबाहेक कोही उपास्य छैन, उनी परम कृपालु, परम दयालु छन् ।

إِنَّ فِيْ خَلْقِ السَّمٰوٰتِ وَالْأَرْضِ وَ
اخْتِلَافِ الَّيْلِ وَالنَّهَارِ وَالْفُلْكِ الَّتِيْ
تَجْرِيْ فِي الْبَحْرِ بِمَا يَنْفَعُ النَّاسَ وَ
مَآ أَنْزَلَ اللّٰهُ مِنَ السَّمَآءِ مِنْ مَّآءٍ
فَأَحْيَا بِهِ الْأَرْضَ بَعْدَ مَوْتِهَا وَبَثَّ
فِيْهَا مِنْ كُلِّ دَآبَّةٍ ۖ وَّتَصْرِيْفِ
الرِّيٰحِ وَالسَّحَابِ الْمُسَخَّرِ بَيْنَ السَّمَآءِ
وَالْأَرْضِ لَاٰيٰتٍ لِّقَوْمٍ يَّعْقِلُوْنَ ﴿١٦٥﴾

१६५.निश्चय नै, आकाशमण्डल तथा पृथ्वीको सृष्टिमा, रात र दिनको अनुवर्तनमा, तथा ती जहाजहरूमा जुन मानिसहरूका लागि लाभदायक वस्तुहरू लिएर समुद्रमा हिँड्ने गर्छन्, तथा त्यस पानीमा जसलाई अल्लाहले आकाशबाट अवतीर्ण गर्छन् र त्यसैद्वारा पृथ्वीलाई उसको मृत्युपश्चात् पुन; जीवित गर्छन् तथा त्यसमा हरेक प्रकारका जीवजन्तु व्याप्त पार्छन्, तथा हावाको दिशा परिवर्तन गर्नमा, तथा ती बादलहरूमा जुन आकाश र पृथ्वीका बीच सेवारत रहन बाध्य छन्– बुद्धिमान व्यक्तिहरूका निम्ति निश्चय नै चिह्नहरू रहेका छन् ।

وَمِنَ النَّاسِ مَنْ يَّتَّخِذُ مِنْ دُوْنِ اللّٰهِ
أَنْدَادًا يُّحِبُّوْنَهُمْ كَحُبِّ اللّٰهِ ۖ وَ

१६६.तथा केही मानिसहरू यस्ता छन् जसले अल्लाहलाई छाडी अन्यान्य

الَّذِيْنَ اٰمَنُوْٓا اَشَدُّ حُبًّا لِّلّٰهِ ؕ وَلَوْ يَرَى الَّذِيْنَ ظَلَمُوْٓا اِذْ يَرَوْنَ الْعَذَابَ ۙ اَنَّ الْقُوَّةَ لِلّٰهِ جَمِيْعًا ۙ وَّ اَنَّ اللّٰهَ شَدِيْدُ الْعَذَابِ ﴿١٦٦﴾

वस्तुहरूलाई उपास्य बनाउँछन्, तिनीहरू ती वस्तुहरूसित त्यसरी प्रेम गर्छन् जसरी अल्लाहसंग प्रेम गर्नु यथोचित थियो । परन्तु ती व्यक्तिहरू जसले विश्वास गर्छन् तिनीहरू अल्लाहप्रति सर्वाधिक अनुरागी हुन्छन् । तथा ती व्यक्तिहरू जसले अन्याय गरेका छन्, तिनीहरूले जुन दण्ड देख्नेछन् (त्यस क्षणलाई अहिले) देख्नसक्ने भए सम्पूर्ण शक्तिका मालिक अल्लाह नै हुन्, तथा अल्लाह कठोर दण्डदाता हुन् भनी (तिनीहरूले हृदयङ्गम गर्ने थिए) ।

اِذْ تَبَرَّاَ الَّذِيْنَ اتُّبِعُوْا مِنَ الَّذِيْنَ اتَّبَعُوْا وَرَاَوُا الْعَذَابَ وَتَقَطَّعَتْ بِهِمُ الْاَسْبَابُ ﴿١٦٧﴾

१६७.(साँच्चै नै यदि तिनीहरूले त्यस घडीलाई) जुनघडीमा ती अनुसरण गरिने गरिएका व्यक्तिहरू आफ्ना अनुसरणकारी-हरूबाट अलगिने छन्, तथा तिनीहरूले दण्डलाई देख्नेछन् तथा तिनीहरूका सम्पूर्ण उम्कने साधनहरू बिच्छिन्न हुनेछन् (अहिले देख्नसक्ने भए निश्चय नै बोध गर्ने थिए) ।

وَقَالَ الَّذِيْنَ اتَّبَعُوْا لَوْ اَنَّ لَنَا كَرَّةً فَنَتَبَرَّاَ مِنْهُمْ كَمَا تَبَرَّءُوْا مِنَّا ؕ كَذٰلِكَ يُرِيْهِمُ اللّٰهُ اَعْمَالَهُمْ حَسَرٰتٍ عَلَيْهِمْ ؕ وَمَا هُمْ بِخٰرِجِيْنَ مِنَ النَّارِ ﴿١٦٨﴾

१६८.तथा ती व्यक्तिहरू जसले अनुसरण गर्ने गर्थे के भन्नेछन् भने–"यदि हामीलाई एकपटक फर्किन मिल्थ्यो भने हामी निश्चय नै तिनीहरूलाई त्यसरीनै त्यागने थियौं जसरी तिनीहरूले हामीलाई त्यागे ।" यसप्रकार अल्लाहले तिनीहरूलाई तिनका कार्यहरू तिनीहरूका निम्ति सन्तापस्वरूप रहेका छन् भनी देखाउने छन् तथा तिनीहरू कदापि अग्निबाट बाहिर निस्कने छैनन् ।

يٰٓاَيُّهَا النَّاسُ كُلُوْا مِمَّا فِى الْاَرْضِ حَلٰلًا طَيِّبًا ۖ وَّلَا تَتَّبِعُوْا خُطُوٰتِ

१६९.हे मानिसहरू हो ! पृथ्वीमा रहेका (वस्तुहरू)मध्ये वैध तथा स्वास्थ्यकर*

* तयुयबः- जुन वस्तुलाई वैध घोषित गरिएको छ त्यस (वस्तुप्रति) को व्यक्तिगत रुचिका साथै त्यो वस्तु स्वास्थ्यकर रहेको छ भन्ने (अर्थ) मा 'तय्यब ( طَيِّب ) शब्द प्रयोग हुन्छ । पहिलो खण्डमा एउटा वैध खाद्यवस्तु रुचि, स्वाद र परिस्थितिको भिन्नताको आधारमा एउटा व्यक्तिका निम्ति स्वास्थ्यकर हुनसक्छ तथा अन्य व्यक्तिहरूका निम्ति अस्वास्थ्यकर हुनसक्छ । दोस्रो खण्डमा उक्त (शब्द) ले विश्वासीजनले केवल वैध खाद्य मात्र नभएर उत्तम, स्वास्थ्यवान र स्वास्थ्यकर अवस्थामा रहेको खाद्यलाई प्राथमिकता दिन्छन् भन्ने कुराको सङ्केतका साथ खाद्य पदार्थको अवस्था दर्शाउँछ ।

الشَّيْطٰنِ ۭ اِنَّهٗ لَكُمْ عَدُوٌّ مُّبِيْنٌ ﴿١٦٩﴾

(वस्तुहरू) खाऊ, तथा सैतानका पाइला नपच्छयाऊ, निश्चय नै त्यो तिमीहरूका लागि खुल्लम्खुल्ला शत्रु हो ।

اِنَّمَا يَاْمُرُكُمْ بِالسُّوْۗءِ وَالْفَحْشَاۗءِ وَاَنْ تَقُوْلُوْا عَلَى اللّٰهِ مَا لَا تَعْلَمُوْنَ ﴿١٧٠﴾

१७०.उसले तिमीहरूलाई केवल दुष्कर्म र निर्लज्जताका कार्य गर्न तथा अल्लाहबारे त्यो कुरो गर्ने निर्देशन दिन्छ जसबारे तिमीहरूलाई ज्ञान छैन ।

وَاِذَا قِيْلَ لَهُمُ اتَّبِعُوْا مَآ اَنْزَلَ اللّٰهُ قَالُوْا بَلْ نَتَّبِعُ مَآ اَلْفَيْنَا عَلَيْهِ اٰبَاۗءَنَا ۭ اَوَلَوْ كَانَ اٰبَاۗؤُھُمْ لَا يَعْقِلُوْنَ شَـيْــــًٔـا وَّلَا يَهْتَدُوْنَ ﴿١٧١﴾

१७१.तथा "अल्लाहले जुन कुरा अवतीर्ण गरेका छन् त्यसको अनुसरण गर" भनी जब तिनीहरूलाई भनिन्छ तब तिनीहरू के भन्छन् भने– "होइन हामी त त्यसको अनुसरण गर्छौं जहाँ हामीले हाम्रा पितृहरूलाई पायौं ।" के तिनिहरूका पितृहरू बुद्धिहीन अथवा सन्मार्ग प्राप्त थिएनन् भने पनि?

وَمَثَلُ الَّذِيْنَ كَفَرُوْا كَمَثَلِ الَّذِيْ يَنْعِقُ بِمَا لَا يَسْمَعُ اِلَّا دُعَاۗءً وَّنِدَاۗءً ۭ صُمٌّۢ بُكْمٌ عُمْيٌ فَهُمْ لَا يَعْقِلُوْنَ ﴿١٧٢﴾

१७२.तथा ती अविश्वास गर्ने व्यक्तिहरूको अवस्था त्यस व्यक्तिको अवस्थाभैं छ जसले कुनै यस्तो वस्तुलाई पुकार्छ जसले केवल बोलाई र चिच्याईबाहेक अन्य केही सुन्दैन। (तिनीहरू) बहिरा, लाटा (तथा) अन्धा छन्, त्यसकारण तिनीहरू बुझ्दैनन् ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا كُلُوْا مِنْ طَيِّبٰتِ مَا رَزَقْنٰكُمْ وَاشْكُرُوْا لِلّٰهِ اِنْ كُنْتُمْ اِيَّاهُ تَعْبُدُوْنَ ﴿١٧٣﴾

१७३.हे विश्वासीजन हो ! हामीले प्रदान गरेका पवित्र वस्तुहरूबाट खाऊ, तथा अल्लाहप्रति कृतज्ञता ज्ञापन गर यदि तिमीहरू उनकै उपासना गर्छौ (भने) ।

اِنَّمَا حَرَّمَ عَلَيْكُمُ الْمَيْتَةَ وَالدَّمَ وَلَحْمَ الْخِنْزِيْرِ وَمَآ اُهِلَّ بِهٖ لِغَيْرِ اللّٰهِ ۚ فَمَنِ اضْطُرَّ غَيْرَ بَاغٍ وَّلَا عَادٍ فَلَآ اِثْمَ عَلَيْهِ ۭ اِنَّ اللّٰهَ غَفُوْرٌ رَّحِيْمٌ ﴿١٧٤﴾

१७४.उनले तिमीहरूका निम्ति केवल मृतजन्तु, तथा रगत र सुँगुरको मासु तथा ती वस्तुहरू जसलाई अल्लाहबाहेक अरूको नाममा भाकल गरिएको हुन्छ, अवैध गरेको छन् । परन्तु त्यस निरूपाय व्यक्तिप्रति जसले बिरुद्घाचरण तथा सीमोल्लङ्घन गर्दैन कुनै पाप लाग्नेछैन । निश्चय नै अल्लाह परम क्षमाशील, परम दयालु छन् ।

१७५.ती व्यक्तिहरू जसले अल्लाहले पुस्तकमा अवतीर्ण गरेका कुरालाई लुकाउँछन्, तथा त्यसको सट्टा निकृष्ट मूल्य लिन्छन्, तिनीहरूले अग्निबाहेक अन्य कुनै वस्तुले आफ्नो पेट भर्दैनन् तथा प्रलयका दिन अल्लाह न तिनीहरू सँग बोल्नेछन् न त तिनीहरूलाई उनले पवित्र घोषित गर्नेछन् । तथा तिनीहरूका निम्ति पीडाजनक दण्ड छ ।

إِنَّ الَّذِينَ يَكْتُمُونَ مَا أَنْزَلَ اللَّهُ مِنَ الْكِتَٰبِ وَيَشْتَرُونَ بِهِۦ ثَمَنًا قَلِيلًا ۙ أُولَٰٓئِكَ مَا يَأْكُلُونَ فِي بُطُونِهِمْ إِلَّا النَّارَ وَلَا يُكَلِّمُهُمُ اللَّهُ يَوْمَ الْقِيَٰمَةِ وَلَا يُزَكِّيهِمْ ۚ وَلَهُمْ عَذَابٌ أَلِيمٌ ﴿١٧٥﴾

१७६.यी व्यक्तिहरू तिनै हुन् जसले सुपथ छाडी विपथ तथा क्षमा छाडी दण्ड अँगालेका छन् । अत: अग्निमा तिनीहरूको सहनशीलता कस्तो आश्चर्यजनक रहेको छ !

أُولَٰٓئِكَ الَّذِينَ اشْتَرَوُا الضَّلَٰلَةَ بِالْهُدَىٰ وَالْعَذَابَ بِالْمَغْفِرَةِ ۚ فَمَآ أَصْبَرَهُمْ عَلَى النَّارِ ﴿١٧٦﴾

१७७.यो किन हुनेछ भने अल्लाहले यस किताबलाई सत्यका साथ अवतीर्ण गरेका छन् । तथा ती व्यक्तिहरू जसले यस किताबका सम्बन्धमा मतभेद उत्पन्न गरेका छन्, निश्चय नै तिनीहरू शत्रुतामा धेरै अगाडि पुगेका छन् ।

ذَٰلِكَ بِأَنَّ اللَّهَ نَزَّلَ الْكِتَٰبَ بِالْحَقِّ ۗ وَإِنَّ الَّذِينَ اخْتَلَفُوا فِي الْكِتَٰبِ لَفِي شِقَاقٍ بَعِيدٍ ﴿١٧٧﴾

१७८.तिमीहरूले आफ्नो मुहार पूर्वतर्फ अथवा पश्चिमतर्फ गर्नु कुनै पुण्यकार्य होइन परन्तु त्यो व्यक्ति पुण्यशील हो जसले अल्लाह र अन्तिम दिन, तथा फरिस्ताहरू र धर्मग्रन्थ तथा सम्पूर्ण सन्देशवाहकहरूप्रति विश्वास गर्छ । तथा उनको महिमाका कारण आफ्ना नातेदार, तथा टुहुरा र दरिद्र र पथिक तथा भिखारीहरूलाई र दासहरूको (मुक्तिका) निम्ति धन दिन्छ, तथा नमाजको अनुष्ठान गर्छ, र जगात चुकाउँछ । तथा ती व्यक्तिहरू जसले जब कुनै अङ्गीकार गर्छन् त्यस अङ्गीकारलाई पूर्ण गर्छन् तथा अभावग्रस्त र रोगग्रस्त अवस्थामा सहनशीलता र लडाईका समयमा (अडिग) रहन्छन् यिनीहरू नै हुन् जसले आफ्नो सत्यवादिता प्रमाणित गरेका छन्

لَيْسَ الْبِرَّ أَنْ تُوَلُّوا وُجُوهَكُمْ قِبَلَ الْمَشْرِقِ وَالْمَغْرِبِ وَلَٰكِنَّ الْبِرَّ مَنْ ءَامَنَ بِاللَّهِ وَالْيَوْمِ الْءَاخِرِ وَالْمَلَٰٓئِكَةِ وَالْكِتَٰبِ وَالنَّبِيِّۦنَ ۚ وَءَاتَى الْمَالَ عَلَىٰ حُبِّهِۦ ذَوِي الْقُرْبَىٰ وَالْيَتَٰمَىٰ وَالْمَسَٰكِينَ وَابْنَ السَّبِيلِ وَالسَّآئِلِينَ وَفِي الرِّقَابِ وَأَقَامَ الصَّلَوٰةَ وَءَاتَى الزَّكَوٰةَ ۚ وَالْمُوفُونَ بِعَهْدِهِمْ إِذَا عَٰهَدُوا ۖ وَالصَّٰبِرِينَ فِي الْبَأْسَآءِ وَالضَّرَّآءِ وَحِينَ الْبَأْسِ ۗ أُولَٰٓئِكَ الَّذِينَ صَدَقُوا ۖ وَأُولَٰٓئِكَ هُمُ الْمُتَّقُونَ ﴿١٧٨﴾

तथा यिनीहरू नै पूर्ण अल्लाहभीरु हुन् ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوا۟ كُتِبَ عَلَيْكُمُ ٱلْقِصَاصُ فِى ٱلْقَتْلَى ۖ ٱلْحُرُّ بِٱلْحُرِّ وَٱلْعَبْدُ بِٱلْعَبْدِ وَٱلْأُنثَىٰ بِٱلْأُنثَىٰ ۚ فَمَنْ عُفِىَ لَهُۥ مِنْ أَخِيهِ شَىْءٌ فَٱتِّبَاعٌۢ بِٱلْمَعْرُوفِ وَأَدَآءٌ إِلَيْهِ بِإِحْسَٰنٍ ۗ ذَٰلِكَ تَخْفِيفٌ مِّن رَّبِّكُمْ وَرَحْمَةٌ ۗ فَمَنِ ٱعْتَدَىٰ بَعْدَ ذَٰلِكَ فَلَهُۥ عَذَابٌ أَلِيمٌ ﴿١٧٨﴾

१७९.हे विश्वासीजन हो ! हताहत व्यक्तिहरू (का सम्बन्धमा बराबरीको) प्रतिशोध लिनु तिमीहरूका निम्ति कर्तव्य ठहराइएको छ: स्वाधीन पुरुषका निम्ति स्वाधीन पुरुष तथा दासका निम्ति दास तथा महिलाका निम्ति महिला । परन्तु यदि कसैलाई उसका भाइका तर्फबाट केही दण्ड क्षमा गरिन्छ भने उस्ले यथोचित रूपमा त्यो (हत्याको रक्तमूल्य) प्राप्त गर्नसक्छ, तथा (हत्याराले) उत्तम रूपमा उसलाई (हत्याको) रक्त मूल्य चुकाउनु पर्नेछ* । यो तिम्रा प्रतिपालकका तर्फबाट छुटस्वरूप तथा करुणास्वरूप हो । यसपछि जसले सीमालङ्घन गर्छ त्यसका निम्ति यातनादायक दण्ड छ ।

وَلَكُمْ فِى ٱلْقِصَاصِ حَيَوٰةٌ يَٰٓأُو۟لِى ٱلْأَلْبَٰبِ لَعَلَّكُمْ تَتَّقُونَ ﴿١٧٩﴾

१८०.हे बुद्धिमान मानिस हो ! यस प्रतिशोध (को कानुन)मा तिमीहरूका निम्ति जीवन छ- ताकि तिमीहरू सुरक्षित रहन सक ।

كُتِبَ عَلَيْكُمْ إِذَا حَضَرَ أَحَدَكُمُ ٱلْمَوْتُ إِن تَرَكَ خَيْرًا ٱلْوَصِيَّةُ لِلْوَٰلِدَيْنِ وَٱلْأَقْرَبِينَ بِٱلْمَعْرُوفِ ۖ حَقًّا عَلَى ٱلْمُتَّقِينَ ﴿١٨٠﴾

१८१.तिमीहरूमध्ये जब कसैको मृत्युवस्था आइपुग्छ र यदि त्यसले प्रशस्त सम्पत्ति छाडेको छ भने (त्यसले) आफ्ना पिता-माता तथा नातेदारहरूलाई उचित व्यवहार गर्ने इच्छापत्र गरी (छाडोस्) भन्ने निर्देशन तिमीहरूप्रति अनिवार्य गरिएको छ, (यो) अल्लाहको भय राख्ने व्यक्तिहरूका निम्ति अनिवार्य कर्तव्यस्वरूप रहेको छ ।

فَمَنۢ بَدَّلَهُۥ بَعْدَمَا سَمِعَهُۥ فَإِنَّمَآ إِثْمُهُۥ عَلَى ٱلَّذِينَ يُبَدِّلُونَهُۥٓ ۚ إِنَّ ٱللَّهَ سَمِيعٌ عَلِيمٌ ﴿١٨١﴾

१८२.तर जुन व्यक्तिले यसलाई सुनेपश्चात् परिवर्तन गर्छ त्यसको पाप केवल तिनीहरूलाई लाग्नेछ जसले यसलाई परिवर्तन गर्नेछन् । निश्चय नै

* अर्थात् त्यो रक्तमूल्य न्यायोचित र उत्तमरूपमा निर्धारित गरियोस् तथा मृत व्यक्तिका नातेदारलाई प्रदान गरियोस् ।

अल्लाह परमश्रोता, सर्वज्ञ छन् ।

فَمَنْ خَافَ مِنْ مُّوْصٍ جَنَفًا اَوْ اِثْمًا فَاَصْلَحَ بَيْنَهُمْ فَلَآ اِثْمَ عَلَيْهِ ۗ اِنَّ اللّٰهَ غَفُوْرٌ رَّحِيْمٌ ﴿١٨٢﴾

१८३.परन्तु जसले इच्छापत्र गर्ने व्यक्तिप्रति पक्षपात अथवा पापको आशङ्का गर्छ तथा तिनीहरूबीच (प्रभावित पक्षहरूबीच) सम्झौता गराउँछ त्यसप्रति कुनै पाप लाग्नेछैन । निश्चय नै अल्लाह अति क्षमाशील, करुणाशील छन् ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا كُتِبَ عَلَيْكُمُ الصِّيَامُ كَمَا كُتِبَ عَلَى الَّذِيْنَ مِنْ قَبْلِكُمْ لَعَلَّكُمْ تَتَّقُوْنَ ﴿١٨٣﴾

१८४.हे विश्वासीजन हो ! तिमीहरूका निम्ति (त्यसरी नै) अनिवार्यरूपमा व्रत निर्धारित गरिएको छ जसरी तिमीहरूभन्दा अघिरहेका व्यक्तिहरूप्रति निर्धारित गरिएको थियो, ताकि तिमीहरू धर्मपरायण बन ।

اَيَّامًا مَّعْدُوْدٰتٍ ۗ فَمَنْ كَانَ مِنْكُمْ مَّرِيْضًا اَوْ عَلٰى سَفَرٍ فَعِدَّةٌ مِّنْ اَيَّامٍ اُخَرَ ۗ وَعَلَى الَّذِيْنَ يُطِيْقُوْنَهٗ فِدْيَةٌ طَعَامُ مِسْكِيْنٍ ۗ فَمَنْ تَطَوَّعَ خَيْرًا فَهُوَ خَيْرٌ لَّهٗ ۗ وَاَنْ تَصُوْمُوْا خَيْرٌ لَّكُمْ اِنْ كُنْتُمْ تَعْلَمُوْنَ ﴿١٨٤﴾

१८५.(अनिवार्यरूपमा राख्नुपर्ने व्रतहरू) निर्धारित केही दिनहरूको लागि हुन् । परन्तु तिमीहरूमध्ये जुन व्यक्ति रोगी छ अथवा यात्रामा छ उसले अरू दिनहरूमा त्यति नै सङ्ख्यामा (व्रतहरू राख्नु पर्नेछ), तथा ती व्यक्तिहरूका निम्ति जसलाई व्रतराख्नु अति कठिन पर्छ तिनीहरूले त्यसको बदलामा एउटा दरिद्र व्यक्तिलाई भोजन दिनु अनिवार्य हुनेछ । अत: जसले पूर्ण आज्ञाकारीताका साथ कुनै पुण्यकार्य गर्छ त्यो उसका निम्ति मङ्गलमय हुनेछ, तथा यदि तिमीहरूलाई थाहा हुने हो भने व्रत राख्नु नै तिमीहरूका निम्ति कल्याणमय हुनेछ ।

شَهْرُ رَمَضَانَ الَّذِيْٓ اُنْزِلَ فِيْهِ الْقُرْاٰنُ هُدًى لِّلنَّاسِ وَبَيِّنٰتٍ مِّنَ الْهُدٰى وَالْفُرْقَانِ ۚ فَمَنْ شَهِدَ مِنْكُمُ الشَّهْرَ فَلْيَصُمْهُ ۗ وَمَنْ كَانَ مَرِيْضًا اَوْ عَلٰى سَفَرٍ فَعِدَّةٌ مِّنْ اَيَّامٍ اُخَرَ ۗ يُرِيْدُ اللّٰهُ بِكُمُ الْيُسْرَ وَلَا يُرِيْدُ بِكُمُ الْعُسْرَ ۖ وَلِتُكْمِلُوا الْعِدَّةَ وَلِتُكَبِّرُوا اللّٰهَ عَلٰى مَا هَدٰىكُمْ وَلَعَلَّكُمْ تَشْكُرُوْنَ ﴿١٨٥﴾

१८६.रमजानको महिना त्यो हो जसमा सम्पूर्ण मानवजातिका निम्ति मार्गदर्शनस्वरूप, तथा मार्गदर्शनका स्पष्ट प्रमाणहरू तथा सत्य र असत्यका माझमा भेद गर्ने कुरान अवतीर्ण गरिएको थियो जसमा तथ्यहरू तथा अलौकिक चिह्नहरू रहेका छन् । अत: तिमीहरूमध्ये जो व्यक्ति यस महिनामा (घरमा) उपस्थित रहन्छ उसले त्यसमा व्रतहरू राखोस् । परन्तु जो व्यक्ति रोगी छ अथवा यात्रामा छ उसले अरू दिनहरूमा त्यति नै सङ्ख्यामा

(व्रतहरू राख्नु पर्नेछ) । अल्लाह तिमीहरूका निम्ति सुविधाको कामना गर्छन्, तथा तिमीहरूका निम्ति कठिनाइको कामना गर्दैनन् । तथा तिमीहरू त्यो संख्या पुरा गर र तिमीहरूलाई सन्मार्ग प्रदर्शन गरेवापत अल्लाहको महानता वर्णन गर– ताकि तिमीहरू कृतज्ञ बन ।

وَإِذَا سَأَلَكَ عِبَادِي عَنِّي فَإِنِّي قَرِيبٌ ۖ أُجِيبُ دَعْوَةَ الدَّاعِ إِذَا دَعَانِ ۖ فَلْيَسْتَجِيبُوا لِي وَلْيُؤْمِنُوا بِي لَعَلَّهُمْ يَرْشُدُونَ ﴿١٨٦﴾

१८७.तथा जब मेरा भक्तहरूले तिमीलाई मेरा सम्बन्धमा प्रश्न गर्छन् । (भन) : "म निकटमा छु । जब कुनै भक्तले मलाई पुकार्छ तब म त्यसको प्रार्थनाको उत्तर दिन्छु । अत: तिनी-हरूले मेरो (कुरा) ध्यानपूर्वक सुनून् तथा म प्रति विश्वास गरुन्– ताकि तिनीहरूलाई सन्मार्ग प्राप्त होस् ।

أُحِلَّ لَكُمْ لَيْلَةَ الصِّيَامِ الرَّفَثُ إِلَىٰ نِسَائِكُمْ ۚ هُنَّ لِبَاسٌ لَّكُمْ وَأَنتُمْ لِبَاسٌ لَّهُنَّ ۗ عَلِمَ اللَّهُ أَنَّكُمْ كُنتُمْ تَخْتَانُونَ أَنفُسَكُمْ فَتَابَ عَلَيْكُمْ وَعَفَا عَنكُمْ ۖ فَالْآنَ بَاشِرُوهُنَّ وَابْتَغُوا مَا كَتَبَ اللَّهُ لَكُمْ ۚ وَكُلُوا وَاشْرَبُوا حَتَّىٰ يَتَبَيَّنَ لَكُمُ الْخَيْطُ الْأَبْيَضُ مِنَ الْخَيْطِ الْأَسْوَدِ مِنَ الْفَجْرِ ۖ ثُمَّ أَتِمُّوا الصِّيَامَ إِلَى اللَّيْلِ ۚ وَلَا تُبَاشِرُوهُنَّ وَأَنتُمْ عَاكِفُونَ فِي الْمَسَاجِدِ ۗ تِلْكَ حُدُودُ اللَّهِ فَلَا تَقْرَبُوهَا ۗ كَذَٰلِكَ يُبَيِّنُ اللَّهُ آيَاتِهِ لِلنَّاسِ لَعَلَّهُمْ يَتَّقُونَ ﴿١٨٧﴾

१८८.व्रत राखेका रातहरूमा आफ्ना धर्मपत्नीहरूसंग संसर्ग गर्नु तिमीहरूका निम्ति वैध रहेको छ । तिनीहरू तिमीहरूका निम्ति परिधान स्वरूप हुन् तथा तिमीहरू उनीहरूका निम्ति परिधानस्वरूप हौ । तिमीहरू आफुमाथि अन्याय गर्ने गर्थ्यौ भनी अल्लाह जान्दछन्, त्यसकारण उनले तिमीहरूप्रति कृपा दृष्टि गरे तथा तिमीहरूलाई राहत प्रदान गरे । अत: अब तिमीहरू उनीहरूका निकट जाऊ तथा अल्लाहले जुन कुरा तिमीहरूका निम्ति निर्धारण गरेका छन् त्यसलाई खोज तथा बिहानीको सेतो डोरो जबसम्म रात्रिको अँध्यारो (कालो) डोरोबाट पृथक देखिदैन तबसम्म खान-पिन गर । तत्पश्चात् सन्ध्यापर्यन्त व्रत पूरा गर तथा जब तिमीहरू उपासनार्थ मस्जिदमा वास गर्छौ त्यस अवधिमा उनीहरूका निकट नजाऊ । यी अल्लाहद्वारा निर्धारित सीमाहरू हुन् त्यसकारण तिनका निकट नजाऊ । यसै प्रकार अल्लाहले आफ्ना निर्देशनहरू मानिसहरूका निम्ति वर्णन गर्छन्– ताकि

तिनीहरू अनिष्टबाट सुरक्षित रहुन् ।

وَلَا تَأْكُلُوْٓا اَمْوَالَكُمْ بَيْنَكُمْ بِالْبَاطِلِ وَتُدْلُوْا بِهَآ اِلَى الْحُكَّامِ لِتَأْكُلُوْا فَرِيْقًا مِّنْ اَمْوَالِ النَّاسِ بِالْاِثْمِ وَاَنْتُمْ تَعْلَمُوْنَ ﴿۱۸۹﴾

१८९.तथा तिमीहरू आफ्नो सम्पत्ति मिथ्या-पूर्वक परस्परमा खाने नगर, न ता त्यसलाई मानिसहरूको सम्पत्तिबाट केही अंश जानी-बूझी अनुचित ढंगले हडप्नका निम्ति (घूसको रूपमा) हाकिमहरूकहाँ पुऱ्याऊ ।

يَسْـَٔلُوْنَكَ عَنِ الْاَهِلَّةِ ؕ قُلْ هِيَ مَوَاقِيْتُ لِلنَّاسِ وَالْحَجِّ ؕ وَلَيْسَ الْبِرُّ بِاَنْ تَاْتُوا الْبُيُوْتَ مِنْ ظُهُوْرِهَا وَلٰكِنَّ الْبِرَّ مَنِ اتَّقٰى ۚ وَاْتُوا الْبُيُوْتَ مِنْ اَبْوَابِهَا ۪ وَاتَّقُوا اللّٰهَ لَعَلَّكُمْ تُفْلِحُوْنَ ﴿۱۹۰﴾

१९०.तिमीसित तिनीहरू नवोदित चन्द्रमाको सम्बन्धमा सोध्छन् । तिमी भन, "यी मानिसहरूको (साधारण भलाई) तथा हज् भ्रमणको समय निर्धारित गर्ने साधनहरू हुन् ।" तथा घरमा पछिल्तिरबाट प्रवेश गर्नु कुनै पुण्यकार्य होइन, अपितु त्यो व्यक्ति धार्मिक हो जसले अल्लाहको डर धारण गर्छ । तथा तिमीहरू घरमा तिनका ढोकाहरूबाट प्रवेश गर्ने तथा अल्लाहको डर धारण गर्ने गर– ताकि तिमीहरू कृतकार्य हुन सक ।

وَقَاتِلُوْا فِيْ سَبِيْلِ اللّٰهِ الَّذِيْنَ يُقَاتِلُوْنَكُمْ وَلَا تَعْتَدُوْا ؕ اِنَّ اللّٰهَ لَا يُحِبُّ الْمُعْتَدِيْنَ ﴿۱۹۱﴾

१९१.तथा अल्लाहको मार्गमा ती व्यक्तिहरूसँग युद्ध गर जसले तिमीहरूसँग युद्ध गर्छन् तथा अत्याचार नगर । अल्लाहले अत्याचारीसित कदापि प्रेम गर्दैनन् ।

وَاقْتُلُوْهُمْ حَيْثُ ثَقِفْتُمُوْهُمْ وَاَخْرِجُوْهُمْ مِّنْ حَيْثُ اَخْرَجُوْكُمْ وَالْفِتْنَةُ اَشَدُّ مِنَ الْقَتْلِ ۚ وَلَا تُقٰتِلُوْهُمْ عِنْدَ الْمَسْجِدِ الْحَرَامِ حَتّٰى يُقٰتِلُوْكُمْ فِيْهِ ۚ فَاِنْ قٰتَلُوْكُمْ فَاقْتُلُوْهُمْ ؕ كَذٰلِكَ جَزَآءُ الْكٰفِرِيْنَ ﴿۱۹۲﴾

१९२.तथा तिनीहरूलाई जहाँ भेट्छौ त्यहीं तिनीहरूलाई मार र तिनीहरूलाई त्यस स्थानबाट निकाल जहाँबाट तिनीहरूले तिमीहरूलाई निकालेका थिए, कारण हत्याभन्दा उत्पीडन अधिक हानिकारक छ । तथा तिनीहरूसँग तबसम्म पवित्र मस्जिद (भित्र) तथा निकटमा युद्ध नगर जबसम्म तिनीहरूले त्यहाँ तिमीहरूसँग युद्ध गर्दैनन् । परन्तु यदि तिनीहरूले तिमीहरूसँग युद्ध गर्छन् भने तिमीहरूपनि तिनीहरूसँग युद्ध गर । ती अविश्वासीहरूको यही नै प्रतिफल हो ।

१९३.परन्तु यदि तिनीहरू स्वयम् रोकिए भने निश्चय नै अल्लाह अति क्षमाशील तथा परम दानशील छन् ।

فَاِنِ انْتَهَوْا فَاِنَّ اللّٰهَ غَفُوْرٌ رَّحِيْمٌ ﴿١٩٢﴾

१९४.जबसम्म अशान्तिको अन्त हुँदैन तथा धर्म अल्लाहका निम्ति (स्वतन्त्ररूपमा प्रतिष्ठित) हुँदैन तबसम्म तिनीहरूसँग युद्ध गर । परन्तु यदि तिनीहरू स्वयम् रोकिए भने अत्याचारीहरूबाहेक अन्य कसैविरुद्ध धर-पकड उचित हुनेछैन (भनी जान) ।

وَقٰتِلُوْهُمْ حَتّٰى لَا تَكُوْنَ فِتْنَةٌ وَّ
يَكُوْنَ الدِّيْنُ لِلّٰهِ ۚ فَاِنِ انْتَهَوْا فَلَا
عُدْوَانَ اِلَّا عَلَى الظّٰلِمِيْنَ ﴿١٩٣﴾

१९५.पवित्र महिनाको (उल्लङ्घनको प्रतिफल) पवित्र महिनामा (दिइन्छ) तथा (सम्पूर्ण) पवित्र वस्तुहरूको तद्‌रूप बदलाको विधान रहेको छ । त्यसकारण जसले तिमीहरूमाथि अत्याचार गर्छ उसलाई उसको अत्याचारको दण्ड उसले तिमीहरूमाथि गरेको अत्याचार अनुरूप नै देऊ । तथा अल्लाहको त्रास राख तथा के ज्ञात राख भने अल्लाह धर्मपरायण व्यक्तिहरूसंग रहने गर्छन्

اَلشَّهْرُ الْحَرَامُ بِالشَّهْرِ الْحَرَامِ وَ
الْحُرُمٰتُ قِصَاصٌ ۚ فَمَنِ اعْتَدٰى
عَلَيْكُمْ فَاعْتَدُوْا عَلَيْهِ بِمِثْلِ مَا
اعْتَدٰى عَلَيْكُمْ ۪ وَاتَّقُوا اللّٰهَ وَاعْلَمُوْٓا
اَنَّ اللّٰهَ مَعَ الْمُتَّقِيْنَ ﴿١٩٤﴾

१९६.तथा अल्लाहका मार्गमा खर्च गर तथा आफ्ना हातले आफैलाई विनष्ट नगर, तथा पुण्य गर; निश्चय नै अल्लाह पुण्यकार्य गर्नेहरूसित प्रेम गर्छन् ।

وَاَنْفِقُوْا فِيْ سَبِيْلِ اللّٰهِ وَلَا تُلْقُوْا
بِاَيْدِيْكُمْ اِلَى التَّهْلُكَةِ ۛ وَاَحْسِنُوْا ۛ
اِنَّ اللّٰهَ يُحِبُّ الْمُحْسِنِيْنَ ﴿١٩٥﴾

१९७.तथा अल्लाहको निम्ति हज र उम्रालाई समापन गर; परन्तु यदि तिमीहरूलाई त्यसबाट रोकियो भने सुलभ प्राप्य एउटा बलि चढाओ तथा बलि आफ्नो निर्दिष्ट स्थानमा नपुगेसम्म आफ्नो कपाल नखौर । तथा जुन व्यक्ति तिमीहरूमध्ये बिरामी छ अथवा उसको टाउको दुख्ने व्यथा छ भने उसले त्यसको बदलास्वरूप उपवास वा भिक्षादान अथवा एउटा बलिदान दिनु पर्नेछ । परन्तु जब तिमीहरू निरापद हुन्छौ तब जसले उम्रालाई हजसगै समापन गर्छ उसले सुलभप्राप्य एउटा बलि (चढाओस्) । परन्तु (तिमीहरूमध्ये) जसलाई (बलिदान) प्राप्त हुन सक्दैन उसले तीन दिन हजका

وَاَتِمُّوا الْحَجَّ وَالْعُمْرَةَ لِلّٰهِ ۚ فَاِنْ
اُحْصِرْتُمْ فَمَا اسْتَيْسَرَ مِنَ الْهَدْيِ ۚ وَلَا
تَحْلِقُوْا رُءُوْسَكُمْ حَتّٰى يَبْلُغَ الْهَدْيُ
مَحِلَّهٗ ۚ فَمَنْ كَانَ مِنْكُمْ مَّرِيْضًا اَوْ
بِهٖٓ اَذًى مِّنْ رَّاْسِهٖ فَفِدْيَةٌ مِّنْ
صِيَامٍ اَوْ صَدَقَةٍ اَوْ نُسُكٍ ۚ فَاِذَآ
اَمِنْتُمْ ۥ فَمَنْ تَمَتَّعَ بِالْعُمْرَةِ اِلَى
الْحَجِّ فَمَا اسْتَيْسَرَ مِنَ الْهَدْيِ ۚ
فَمَنْ لَّمْ يَجِدْ فَصِيَامُ ثَلٰثَةِ اَيَّامٍ فِى
الْحَجِّ وَسَبْعَةٍ اِذَا رَجَعْتُمْ ۭ تِلْكَ
عَشَرَةٌ كَامِلَةٌ ۭ ذٰلِكَ لِمَنْ لَّمْ يَكُنْ

أَهْلُهُ حَاضِرِي الْمَسْجِدِ الْحَرَامِ ۚ وَاتَّقُوا اللَّهَ وَاعْلَمُوا أَنَّ اللَّهَ شَدِيدُ الْعِقَابِ ﴿١٩٦﴾

दिनहरूमा व्रत राखोस् तथा सात दिन तब व्रत राखोस् जब तिमीहरू घर फर्कनेछौ । यी दश (व्रतहरू) पूरा भए । यो त्यस व्यक्तिका निम्ति हो जसको परिवार पवित्र मस्जिद नजिक बसोबास गर्दैन । तथा अल्लाहको डर राख तथा अल्लाह दण्डका मामिलामा कठोर छन् भन्ने ज्ञात राख ।

الْحَجُّ أَشْهُرٌ مَّعْلُومَاتٌ ۚ فَمَن فَرَضَ فِيهِنَّ الْحَجَّ فَلَا رَفَثَ وَلَا فُسُوقَ وَلَا جِدَالَ فِي الْحَجِّ ۗ وَمَا تَفْعَلُوا مِنْ خَيْرٍ يَعْلَمْهُ اللَّهُ ۗ وَتَزَوَّدُوا فَإِنَّ خَيْرَ الزَّادِ التَّقْوَىٰ ۚ وَاتَّقُونِ يَا أُولِي الْأَلْبَابِ ﴿١٩٧﴾

१९८.हजका महिनाहरू सर्वविदित छन् अत: जसले ती महिनाहरूमा हजयात्राको दृढ संकल्प गर्छ उसले हजका दिनहरूमा वाहियात (कामवासना आदि) कुराहरू गर्नु, आज्ञा भङ्ग गर्नु अथवा कुनै प्रकारको झगडा गर्नु उचित हुनेछैन (भन्ने कुरा ज्ञात राखोस्) । तथा जुन पुण्यकार्य तिमीहरूले गर्छौ अल्लाहले त्यसलाई जान्दछन् । तथा (आवश्यक) खाद्य-पेय (आवश्यक) खाद्य-पेय -पाथेय) लिएर हिंड्ने गर निश्चय नै सर्वोत्तम पाथेय चाहिँ संयम हो । तथा हे बुद्धिमान हो, मेरो (मात्र) भय लिने गर ।

لَيْسَ عَلَيْكُمْ جُنَاحٌ أَن تَبْتَغُوا فَضْلًا مِّن رَّبِّكُمْ ۚ فَإِذَا أَفَضْتُم مِّنْ عَرَفَاتٍ فَاذْكُرُوا اللَّهَ عِندَ الْمَشْعَرِ الْحَرَامِ ۖ وَاذْكُرُوهُ كَمَا هَدَاكُمْ وَإِن كُنتُم مِّن قَبْلِهِ لَمِنَ الضَّالِّينَ ﴿١٩٨﴾

१९९.आफ्ना प्रतिपालकको कृपा प्राप्तिका निम्ति चेष्टा गर्नाले तिमीहरूलाई कुनै पाप लाग्ने छैन । तर जब तिमीहरू "अरफातबाट फर्कन्छौ तब मश्अरल्‌हराममा अल्लाहलाई स्मरण गर, तथा जसरी उनले तिमीहरूलाई आदेश दिएका छन् त्यसरी नै उनलाई स्मरण गर, यद्यपि यसअघि तिमीहरू पथभ्रष्ट व्यक्तिहरूमध्ये थियौ ।

ثُمَّ أَفِيضُوا مِنْ حَيْثُ أَفَاضَ النَّاسُ وَاسْتَغْفِرُوا اللَّهَ ۚ إِنَّ اللَّهَ غَفُورٌ رَّحِيمٌ ﴿١٩٩﴾

२००.तथा जहाँबाट मानिसहरू फर्कने गरेका छन् त्यहीबाट तिमीहरू (पनि) फर्क तथा अल्लाहसँग क्षमा याचना गर । निस्सन्देह, अल्लाह परम क्षमाशील, परम दानशील छन् ।

فَإِذَا قَضَيْتُم مَّنَاسِكَكُمْ فَاذْكُرُوا اللَّهَ كَذِكْرِكُمْ آبَاءَكُمْ أَوْ أَشَدَّ

२०१.तथा जब तिमीहरू आफ्ना अनिवार्य उपासनाहरू गरी सक्छौ तब आफ्ना पितृहरूलाई स्मरण गरेझैँ वा अझ बढी

ذِكْرًا ۗ فَمِنَ النَّاسِ مَنْ يَّقُوْلُ رَبَّنَآ اٰتِنَا فِي الدُّنْيَا وَمَا لَهٗ فِي الْاٰخِرَةِ مِنْ خَلَاقٍ ﴿٢٠٠﴾

रूपमा अल्लाहको गुणगान गर । तथा केही व्यक्तिहरू यस्ता छन् जसले के भन्ने गर्छन् भने, "हे हाम्रा प्रतिपालक ! हामीलाई यस संसारमा (उत्तम कुराहरू) प्रदान गर ।" यस्ता व्यक्तिहरूका निम्ति परलोकमा कुनै अंशभाग हुनेछैन ।

وَمِنْهُمْ مَّنْ يَّقُوْلُ رَبَّنَآ اٰتِنَا فِي الدُّنْيَا حَسَنَةً وَّفِي الْاٰخِرَةِ حَسَنَةً وَّقِنَا عَذَابَ النَّارِ ﴿٢٠١﴾

२०२ तिनीहरूमध्ये केही यस्ता व्यक्तिहरू पनि छन् जसले भन्ने गर्छन् "हे हाम्रा प्रतिपालक, हामीलाई यस संसारमा पनि पुण्य प्रदान गर तथा परलोकमा पनि पुण्य प्रदान गर र हामीलाई आगाको पीडा (दण्ड) बाट रक्षा गर ।"

اُولٰٓئِكَ لَهُمْ نَصِيْبٌ مِّمَّا كَسَبُوْا ۗ وَاللّٰهُ سَرِيْعُ الْحِسَابِ ﴿٢٠٢﴾

२०३.तिनीहरूका निम्ति आफ्नो कमाइका कारण एउटा (उत्तम) अंश रहनेछ । तथा अल्लाहले शीघ्र हिसाब चुक्ता गर्ने गर्छन् ।

وَاذْكُرُوا اللّٰهَ فِيْٓ اَيَّامٍ مَّعْدُوْدٰتٍ ۗ فَمَنْ تَعَجَّلَ فِيْ يَوْمَيْنِ فَلَآ اِثْمَ عَلَيْهِ ۚ وَمَنْ تَاَخَّرَ فَلَآ اِثْمَ عَلَيْهِ ۙ لِمَنِ اتَّقٰى ۗ وَاتَّقُوا اللّٰهَ وَاعْلَمُوْٓا اَنَّكُمْ اِلَيْهِ تُحْشَرُوْنَ ﴿٢٠٣﴾

२०४.तथा निर्धारित दिनहरूमा अल्लाहलाई स्मरण गर । परन्तु जुन व्यक्तिले दुई दिनमै (फर्कनाका निम्ति) हतार हतार गर्छ उसप्रति कुनै पाप हुनेछैन । तथा जुन व्यक्ति पछि रहन्छ उसप्रति (पनि) कुनै पाप हुनेछैन (यो) त्यस व्यक्तिका निम्ति हो जसले अल्लाहको भय राख्छ । तथा अल्लाहको भय राख र तिमीहरू सबैलाई एकत्रित गरी उनका साम् उपस्थित गराईनेछ भन्ने कुरा ज्ञात राख ।

وَمِنَ النَّاسِ مَنْ يُّعْجِبُكَ قَوْلُهٗ فِي الْحَيٰوةِ الدُّنْيَا وَيُشْهِدُ اللّٰهَ عَلٰى مَا فِيْ قَلْبِهٖ ۙ وَهُوَ اَلَدُّ الْخِصَامِ ﴿٢٠٤﴾

२०५.तथा मानिसहरूमध्ये यस्तो व्यक्ति पनि छ जसले गरेका सांसारिक जीवनबारे कुराहरू तिमीलाई राम्रो लाग्ने गर्छन्, तथा उसले अल्लाहलाई त्यस कुराको साक्षी ठहराउँछ जुन उसको मनमा छ वस्तुत: त्यो व्यक्ति नै सबै झगडालुहरूमध्ये सर्वाधिक झगडालु हुन्छ ।

وَاِذَا تَوَلّٰى سَعٰى فِي الْاَرْضِ لِيُفْسِدَ فِيْهَا وَيُهْلِكَ الْحَرْثَ وَالنَّسْلَ ۗ وَاللّٰهُ لَا يُحِبُّ الْفَسَادَ ﴿٢٠٥﴾

२०६.तथा जब त्यो व्यक्ति हाकिम (अधिकार प्राप्त) हुनपुग्छ तब अशान्ति उत्पन्न गर्न तथा खेती र मानिसका

वंशहरूलाई नष्ट गर्नका निम्ति संसारमा दौडादौड गर्छ । तथा अल्लाहले उपद्रव मन पराउँदैनन् ।

وَإِذَا قِيلَ لَهُ اتَّقِ اللَّهَ أَخَذَتْهُ الْعِزَّةُ بِالْإِثْمِ فَحَسْبُهُ جَهَنَّمُ ۚ وَلَبِئْسَ الْمِهَادُ ﴿٢٠٦﴾

२०७.तथा जब उसलाई "अल्लाहको भय मनमा स्थापन गर" भनी भनिन्छ तब अहङ्कारले उसलाई पापकार्यमा (फन) प्रोत्साहित गर्छ । अत: नर्क नै उसको पूर्ण प्रतिफल हुनेछ । तथा निस्सन्देह त्यो निकृष्ट विश्रामस्थान हो ।

وَمِنَ النَّاسِ مَنْ يَشْرِي نَفْسَهُ ابْتِغَاءَ مَرْضَاتِ اللَّهِ ۗ وَاللَّهُ رَءُوفٌ بِالْعِبَادِ ﴿٢٠٧﴾

२०८.तथा मानिसहरूमध्ये यस्ता व्यक्तिहरू पनि छन् जसले अल्लाहको अनुग्रह प्राप्तिका निम्ति स्वयम्लाई बेच्छन् तथा अल्लाह (आफ्ना) भक्तहरूप्रति अति करुणाशील छन् ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا ادْخُلُوا فِي السِّلْمِ كَافَّةً وَلَا تَتَّبِعُوا خُطُوَاتِ الشَّيْطَانِ ۚ إِنَّهُ لَكُمْ عَدُوٌّ مُبِينٌ ﴿٢٠٨﴾

२०९.हे विश्वासीजन हो ! तिमीहरू सम्पूर्ण रूपले आज्ञाकारितामा प्रवेश गर तथा सैतानको पद अनुसरण नगर । निश्चय नै त्यो तिमीहरूको खुल्लमखुल्ला शत्रु हो ।

فَإِنْ زَلَلْتُمْ مِنْ بَعْدِ مَا جَاءَتْكُمُ الْبَيِّنَاتُ فَاعْلَمُوا أَنَّ اللَّهَ عَزِيزٌ حَكِيمٌ ﴿٢٠٩﴾

२१०.तथा यदि तिमीहरू स्पष्ट चिह्नहरूको आगमनपश्चात् (पनि) डगमगायौ भने अल्लाह सर्वशक्तिमान, सर्वज्ञ हुन् भनी जान ।

هَلْ يَنْظُرُونَ إِلَّا أَنْ يَأْتِيَهُمُ اللَّهُ فِي ظُلَلٍ مِنَ الْغَمَامِ وَالْمَلَائِكَةُ وَقُضِيَ الْأَمْرُ ۚ وَإِلَى اللَّهِ تُرْجَعُ الْأُمُورُ ﴿٢١٠﴾

२५ ع ٩

२११.अल्लाह फरिस्ताहरूसित बादलको छाँयामा तिनीहरूका सामु आउन तथा त्यसकुराको निर्णय गरियोस भन्नेबाहेक अरू कुन कुराको तिनीहरू अपेक्षा गरिरहेका छन्? तथा सम्पूर्ण कुराहरू अल्लाहतर्फ फर्काइन्छन् ।

سَلْ بَنِي إِسْرَائِيلَ كَمْ آتَيْنَاهُمْ مِنْ آيَةٍ بَيِّنَةٍ ۗ وَمَنْ يُبَدِّلْ نِعْمَةَ اللَّهِ مِنْ بَعْدِ مَا جَاءَتْهُ فَإِنَّ اللَّهَ شَدِيدُ الْعِقَابِ ﴿٢١١﴾

२१२.इजरायलका सन्तानलाई हामीले कति स्पष्ट चिह्नहरू प्रदान गरेका थियौं भनी सोध । तथा जुन व्यक्तिले अल्लाहको अनुग्रहलाई उससमक्ष आएपश्चात् परिवर्तन गर्छ, तब निश्चय नै अल्लाह दण्ड दिनमा कठोर छन् ।

२१३.जसले विश्वास स्थापना गर्दैनन्, ती व्यक्तिहरूलाई सांसारिक जीवन आकर्षक (देखाइएको) छ, तथा तिनीहरू विश्वासी-हरूप्रति ठट्टा-व्यंग्य गर्ने गर्छन् । परन्तु ती व्यक्तिहरू जसले (अल्लाहको) डर मनमा धारण गर्छन् पुनरुत्थानका दिन तिनीहरूमाथि विजय प्राप्त गर्नेछन्; तथा उल्लाहले जसलाई इच्छा गर्छन् बेहिसाब आफ्नो अनुग्रह) प्रदान गर्छन् ।

زُيِّنَ لِلَّذِيْنَ كَفَرُوا الْحَيٰوةُ الدُّنْيَا وَ
يَسْخَرُوْنَ مِنَ الَّذِيْنَ اٰمَنُوْا ۘ وَ
الَّذِيْنَ اتَّقَوْا فَوْقَهُمْ يَوْمَ الْقِيٰمَةِ ۗ
وَاللّٰهُ يَرْزُقُ مَنْ يَّشَآءُ بِغَيْرِ حِسَابٍ ﴿٢١٢﴾

२१४.सबै मानिसहरू एकै सम्प्रदायका थिए,

(त्यसपछि तिनीहरूमा परस्पर मतभेद हुनगयो), त्यसकारण अल्लाहले सुसन्देशवाहक र सावधानकर्ताको रूपमा नबीहरूलाई पठाए तथा उनीहरूसित सत्यमा आधारित किताब अवतीर्ण गरे, ताकि उनले मानिसहरूमध्ये ती कुराहरूको निर्णय गरुन् जसमा उनीहरूले मतभेद सृष्टि गरेका थिए । (परन्तु तिनीहरूले त्यस पुस्तकबारे मतभेद प्रारम्भ गरे) तथा जसलाई पुस्तक प्रदान गरिएको थियो केवल तिनै व्यक्तिहरूले स्पष्ट चिह्नहरूको आगमनपश्चात् परस्पर विद्रोह तथा फसादका कारण त्यस किताबका सम्बन्धमा मतभेद गरे । अत: अल्लाहले विश्वासीरुलाई स्वेच्छाले त्यस सत्यतातर्फ मार्गदर्शन गरे जसबारे तिनीहरू (अविश्वासीहरू) मतभेद राख्दथे; तथा अल्लाहले जसलाई इच्छा गर्छन् उसलाई सन्मार्ग प्रदर्शन गर्छन् ।

كَانَ النَّاسُ اُمَّةً وَّاحِدَةً ۫ فَبَعَثَ
اللّٰهُ النَّبِيّٖنَ مُبَشِّرِيْنَ وَمُنْذِرِيْنَ ۪ وَ
اَنْزَلَ مَعَهُمُ الْكِتٰبَ بِالْحَقِّ لِيَحْكُمَ
بَيْنَ النَّاسِ فِيْمَا اخْتَلَفُوْا فِيْهِ ۗ وَمَا
اخْتَلَفَ فِيْهِ اِلَّا الَّذِيْنَ اُوْتُوْهُ مِنْۢ بَعْدِ
مَا جَآءَتْهُمُ الْبَيِّنٰتُ بَغْيًاۢ بَيْنَهُمْ ۚ
فَهَدَى اللّٰهُ الَّذِيْنَ اٰمَنُوْا لِمَا اخْتَلَفُوْا
فِيْهِ مِنَ الْحَقِّ بِاِذْنِهٖ ۗ وَاللّٰهُ يَهْدِيْ
مَنْ يَّشَآءُ اِلٰى صِرَاطٍ مُّسْتَقِيْمٍ ﴿٢١٣﴾

२१५.के तिमीहरू स्वर्गमा प्रवेश गरौंला भन्ने धारण राख्दछौ, जबकि तिमीहरू समक्ष ती तिमीहरूभन्दा पहिला गुज्रेका व्यक्तिहरूको अवस्था आएको छैन? तिनीहरूले दु:ख र कष्ट भोगे तथा तिनीहरूलाई भयभीत पारी कंपाइयो, अन्तत: सन्देशवाहक तथा उनका अनुयायी विश्वासीहरूले भने: "अल्लाहको सहयोग कहिले प्राप्त हुन्छ?" सुन, अल्लाहको

اَمْ حَسِبْتُمْ اَنْ تَدْخُلُوا الْجَنَّةَ وَلَمَّا
يَاْتِكُمْ مَّثَلُ الَّذِيْنَ خَلَوْا مِنْ قَبْلِكُمْ ۗ
مَسَّتْهُمُ الْبَاْسَآءُ وَالضَّرَّآءُ وَزُلْزِلُوْا
حَتّٰى يَقُوْلَ الرَّسُوْلُ وَالَّذِيْنَ
اٰمَنُوْا مَعَهٗ مَتٰى نَصْرُ اللّٰهِ ۗ اَلَآ اِنَّ
نَصْرَ اللّٰهِ قَرِيْبٌ ﴿٢١٤﴾

सहयोग निंस्सन्देह अति निकट छ ।

يَسْـَٔلُوْنَكَ مَاذَا يُنْفِقُوْنَ ۬ قُلْ مَآ اَنْفَقْتُمْ مِّنْ خَيْرٍ فَلِلْوَالِدَيْنِ وَ الْاَقْرَبِيْنَ وَالْيَتٰمٰى وَالْمَسٰكِيْنِ وَابْنِ السَّبِيْلِ ۭ وَمَا تَفْعَلُوْا مِنْ خَيْرٍ فَاِنَّ اللّٰهَ بِهٖ عَلِيْمٌ ﴿٢١٦﴾

२१६.के खर्च गर्ने भनी उनीहरूले तिमीलाई सोध्छन् । तिमी भन: "जुनसुकै पवित्र र प्रचूर सम्पत्तिबाट तिमीहरू खर्च गर्छौ त्यो माता-पिता, आत्मीय सम्बन्धी, अनाथ, दरिद्र तथा पथिकहरूका निम्ति होस् । तथा जुनसुकै पुण्य कार्य तिमीहरू गर्छौ, निश्चय नै अल्लाहले त्यसलाई राम्ररी जान्दछन् ।

كُتِبَ عَلَيْكُمُ الْقِتَالُ وَهُوَ كُرْهٌ لَّكُمْ ۚ وَعَسٰٓى اَنْ تَكْرَهُوْا شَيْـًٔا وَّهُوَ خَيْرٌ لَّكُمْ ۚ وَعَسٰٓى اَنْ تُحِبُّوْا شَيْـًٔا وَّهُوَ شَرٌّ لَّكُمْ ۭ وَاللّٰهُ يَعْلَمُ وَاَنْتُمْ لَا تَعْلَمُوْنَ ﴿٢١٧﴾

२१७.रण गर्नु तिमीहरूका निम्ति अनिवार्य कर्तव्य ठहाराइएको छ यद्यपि त्यो तिमीहरूलाई अरूचिकर छ । परन्तु तिमीहरू जुन वस्तुलाई मन पराउँदैनौ सम्भवत: त्यो वस्तु तिमीहरूका निम्ति लाभदायक हुनसक्छ । तथा जुन वस्तुलाई तिमीहरू मनपराउँछौ सम्भवत: त्यो वस्तु तिमीहरूका निम्ति हानिकारक हुनसक्छ । अल्लाह (सबै कुरा) जान्दछन्, तथा तिमीहरू जान्दैनौ ।

يَسْـَٔلُوْنَكَ عَنِ الشَّهْرِ الْحَرَامِ قِتَالٍ فِيْهِ ۭ قُلْ قِتَالٌ فِيْهِ كَبِيْرٌ ۭ وَصَدٌّ عَنْ سَبِيْلِ اللّٰهِ وَكُفْرٌۢ بِهٖ وَالْمَسْجِدِ الْحَرَامِ ۤ وَاِخْرَاجُ اَهْلِهٖ مِنْهُ اَكْبَرُ عِنْدَ اللّٰهِ ۚ وَالْفِتْنَةُ اَكْبَرُ مِنَ الْقَتْلِ ۭ وَلَا يَزَالُوْنَ يُقَاتِلُوْنَكُمْ حَتّٰى يَرُدُّوْكُمْ عَنْ دِيْنِكُمْ اِنِ اسْتَطَاعُوْا ۭ وَمَنْ يَّرْتَدِدْ مِنْكُمْ عَنْ دِيْنِهٖ فَيَمُتْ وَھُوَ كَافِرٌ فَاُولٰۗىِٕكَ حَبِطَتْ اَعْمَالُهُمْ فِي الدُّنْيَا وَالْاٰخِرَةِ ۚ وَاُولٰۗىِٕكَ اَصْحٰبُ النَّارِ ۚ ھُمْ فِيْهَا خٰلِدُوْنَ ﴿٢١٨﴾

२१८.तिनीहरू तिमीलाई पवित्र महिनामा रण गर्नेबारे सोध्छन् । तिमी भन: "त्यसमा रण गर्नु ठूलो (उल्लङ्घन) हो, परन्तु अल्लाहको मार्गबाट ( मानिसहरूलाई) रोक्नु तथा उनको र पवित्र मस्जिद (बाट मानिसहरूलाई रोक्नु) को अनादर गर्नु तथा त्यहाँका बासिन्दा-हरूलाई त्यहाँबाट निकाल्नु अल्लाहका दृष्टिमा त्यो भन्दा ठूलो -पाप) हो; तथा उत्पीडन हत्याभन्दा अधिक घृणित कार्य हो ।" तथा यदि तिनीहरूमा क्षमता रहेमा तिनीहरूले तिमीहरूलाई आफ्ना आस्थाबाट विमुख नगरेसम्म तिमीहरूसँग लडिरहने छन् । तथा तिमीहरूमध्ये जुन व्यक्ति आफ्नो आस्थाबाट विमुख हुन्छ, र अविश्वासी रहेको अवस्थामा मर्छ, तिनीहरूका कर्महरू यस संसारमा तथा परलोकमा खेर जानेछन् । यिनीहरू नै

अग्निका निवासीहरू हुन् तथा त्यसैमा रहिरहने छन् ।

२१९.ती व्यक्तिहरू जसले विश्वास स्थापना गरे तथा जसले आप्रवास गरे तथा अल्लाहका मार्गमा कठिन संघर्ष गरे यस्ता व्यक्तिहरू, अल्लाहको कृपाको आशा गर्ने गर्छन्; तथा अल्लाह अति क्षमाशील, परम दानशील छन् ।

إِنَّ الَّذِيْنَ اٰمَنُوْا وَ الَّذِيْنَ هَاجَرُوْا وَجٰهَدُوْا فِيْ سَبِيْلِ اللّٰهِ ۙ أُولٰٓئِكَ يَرْجُوْنَ رَحْمَتَ اللّٰهِ ۚ وَاللّٰهُ غَفُوْرٌ رَّحِيْمٌ ﴿٢١٩﴾

२२०.तिनीहरू तिमीसँग मदिरा र जुवाखेल-बारे सोध्छन् । तिमी भन; "यी दुवैमा ठूलो पाप छ तथा मानिसहरूका निम्ति (केही) फाइदा पनि छ; परन्तु तिनीहरूमा रहेको पाप तिनीहरूको फाइदाभन्दा अधिक ठूलो छ ।" तथा तिनीहरू तिमीसँग के खर्च गर्ने भनी सोध्छन् । तिमी भन: "जति तिमीहरू किफायत (बचत) गर्नसक्छौ ।" यसै प्रकार अल्लाह आफ्ना निर्देशनहरू तिमीहरूका निम्ति स्पष्टरूपमा वर्णन गर्छन् ताकि तिमीहरू सोच-विचार गर ।

يَسْـَٔلُوْنَكَ عَنِ الْخَمْرِ وَ الْمَيْسِرِ ۚ قُلْ فِيْهِمَآ إِثْمٌ كَبِيْرٌ وَّمَنَافِعُ لِلنَّاسِ ۫ وَإِثْمُهُمَآ أَكْبَرُ مِنْ نَّفْعِهِمَا ۚ وَيَسْـَٔلُوْنَكَ مَاذَا يُنْفِقُوْنَ ۬ قُلِ الْعَفْوَ ۗ كَذٰلِكَ يُبَيِّنُ اللّٰهُ لَكُمُ الْاٰيٰتِ لَعَلَّكُمْ تَتَفَكَّرُوْنَ ﴿٢٢٠﴾

२२१.यस संसार तथा परलोकबारे, तथा तिनीहरू तिमीसँग टुहुराहरूका बारेमा सोध्छन् । तिमी भन: तिनीहरूको उत्थान गर्नु (एउटा) महान (कार्य) हो । तथा यदि तिमीहरूले तिनीहरूसँग संसर्ग गरेमा तिनीहरू तिमीहरूका भाइहरू हुन् । तथा अल्लाहले फसाद गर्ने व्यक्तिलाई सुधार गर्ने व्यक्तिको तुलनामा खुबै चिन्दछन् । तथा यदि अल्लाहको इच्छा रहेकोभए कठिनाईमा पारिदिने थिए । निस्सन्देह, अल्लाह परम क्षमताशील, तत्वज्ञ छन् ।

فِي الدُّنْيَا وَالْاٰخِرَةِ ۗ وَيَسْـَٔلُوْنَكَ عَنِ الْيَتٰمٰى ۗ قُلْ إِصْلَاحٌ لَّهُمْ خَيْرٌ ۗ وَإِنْ تُخَالِطُوْهُمْ فَإِخْوَانُكُمْ ۗ وَاللّٰهُ يَعْلَمُ الْمُفْسِدَ مِنَ الْمُصْلِحِ ۗ وَلَوْ شَآءَ اللّٰهُ لَأَعْنَتَكُمْ ۗ إِنَّ اللّٰهَ عَزِيْزٌ حَكِيْمٌ ﴿٢٢١﴾

२२२.तथा तिमीहरू मूतिर्पूजक महिलाहरूसँग तबसम्म विवाह नगर जबसम्म तिनीहरूले विश्वास स्थापना गर्दैनन्, एउटी विश्वासी दासीमहिला एउटी मूर्तिपूजक महिलाभन्दा अधिक उत्तम हुन्छे यद्यपि त्यो तिमीहरूलाई (कति

وَلَا تَنْكِحُوا الْمُشْرِكٰتِ حَتّٰى يُؤْمِنَّ ۗ وَلَأَمَةٌ مُّؤْمِنَةٌ خَيْرٌ مِّنْ مُّشْرِكَةٍ وَّلَوْ أَعْجَبَتْكُمْ ۚ وَلَا تُنْكِحُوا الْمُشْرِكِيْنَ

حَتّٰى يُؤْمِنُوْا ؕ وَ لَعَبْدٌ مُّؤْمِنٌ خَيْرٌ مِّنْ مُّشْرِكٍ وَّ لَوْ اَعْجَبَكُمْ ؕ اُولٰٓئِكَ يَدْعُوْنَ اِلَى النَّارِ ۖۚ وَاللّٰهُ يَدْعُوْٓا اِلَى الْجَنَّةِ وَالْمَغْفِرَةِ بِاِذْنِهٖ ۚ وَيُبَيِّنُ اٰيٰتِهٖ لِلنَّاسِ لَعَلَّهُمْ يَتَذَكَّرُوْنَ ﴿۲۲۱﴾

नै) राम्री किन नलागोस् । तथा विश्वासी महिलाहरूको विवाह मूर्तिपूजक पुरुषहरूसित तबसम्म नगर जबसम्म तिनीहरूले विश्वास स्थापना गर्दैनन् । एउटा विश्वासी दास एउटा मूर्तिपूजक पुरुषभन्दा अधिक उत्तम हुन्छ यद्यपि त्यो तिमीहरूलाई (कति नै) राम्रो किन नलागोस् । तिनीहरू अग्नितर्फ निम्त्याउँछन्, परन्तु अल्लाह आफ्नो आदेशद्वारा स्वर्ग तथा क्षमातर्फ बोलाउँछन् । तथा उनी आफ्ना चिह्नहरू मानिसहरूका निम्ति स्पष्टरूपमा वर्णन गर्छन्- ताकि तिनीहरूले स्मरण गरून् ।

وَيَسْـَٔلُوْنَكَ عَنِ الْمَحِيْضِ ؕ قُلْ هُوَ اَذًى ۙ فَاعْتَزِلُوا النِّسَآءَ فِى الْمَحِيْضِ ۙ وَلَا تَقْرَبُوْهُنَّ حَتّٰى يَطْهُرْنَ ۚ فَاِذَا تَطَهَّرْنَ فَاْتُوْهُنَّ مِنْ حَيْثُ اَمَرَكُمُ اللّٰهُ ؕ اِنَّ اللّٰهَ يُحِبُّ التَّوَّابِيْنَ وَ يُحِبُّ الْمُتَطَهِّرِيْنَ ﴿۲۲۲﴾

२२३.तिनीहरू तिमीसँग रजस्वलाबारे सोध्छन् । तिमी भन: "यो अस्वस्थ (अवस्था) हो । त्यसकारण रजस्वलाका अवधिमा तिमीहरू आफ्ना पत्नीहरूबाट अलग्गै रहने गर र जबसम्म तिनीहरू पवित्र हुदैनन् तिनीहरूका निकट नजाऊ । परन्तु जब तिनीहरू (स्नानादि गरी) पवित्र हुन्छन् तब अल्लाहको आदेश अनुसार उनका निकट जाऊ । अल्लाह निश्चय नै ती व्यक्तिहरूप्रति जसले उनीतर्फ तन-मन दिने गर्छन् तथा ती व्यक्तिहरूप्रति जसले आफुलाई पवित्र राख्छन्, प्रेम गर्छन् ।

نِسَآؤُكُمْ حَرْثٌ لَّكُمْ ۪ فَاْتُوْا حَرْثَكُمْ اَنّٰى شِئْتُمْ ۫ وَقَدِّمُوْا لِاَنْفُسِكُمْ ؕ وَاتَّقُوا اللّٰهَ وَاعْلَمُوْٓا اَنَّكُمْ مُّلٰقُوْهُ ؕ وَ بَشِّرِ الْمُؤْمِنِيْنَ ﴿۲۲۳﴾

२२४.तिमीहरूका पत्नीहरू तिमीहरूका निम्ति खेतीस्वरूप हुन्; अत: तिमीहरू जुनबेला जसरी इच्छा लाग्छ आफनो खेतीमा प्रवेश गर तथा आफना निम्ति केही (उत्तम वस्तु) अगाडि पठाऊ । तथा अल्लाहसित डराऊ तथा उनीसित तिमीहरूले भेट गर्नेछौ भन्ने कुरा सम्झी राख । तथा आज्ञाकारीहरूलाई (यो) सु-सन्देश देऊ ।

وَلَا تَجْعَلُوا اللّٰهَ عُرْضَةً لِّاَيْمَانِكُمْ اَنْ تَبَرُّوْا وَتَتَّقُوْا وَتُصْلِحُوْا بَيْنَ النَّاسِ ؕ وَاللّٰهُ سَمِيْعٌ عَلِيْمٌ ﴿۲۲۴﴾

२२५.पुण्यकार्य गर्न, तथा संयम धारण गर्न तथा मानिसहरूका बीच शान्ति स्थापना गर्नबाट बच्नका निम्ति तिमीहरू अल्लाहलाई आफ्ना शपथको निशाना

नबनाऊ । तथा अल्लाह सर्वश्रोता, सर्वज्ञ छन् ।

لَا يُؤَاخِذُكُمُ اللّٰهُ بِاللَّغْوِ فِيْٓ اَيْمَانِكُمْ وَلٰكِنْ يُّؤَاخِذُكُمْ بِمَا كَسَبَتْ قُلُوْبُكُمْ ۗ وَاللّٰهُ غَفُوْرٌ حَلِيْمٌ ﴿٢٢٦﴾

२२६.अल्लाहले तिमीहरूका व्यर्थ शपथहरू-प्रति तिमीहरूलाई समाउने छैनन् परन्तु जुनकुरा तिमीहरूको आत्माले आर्जन गर्छ त्यसप्रति उनले तिमीहरूलाई समाउने छन् । तथा अल्लाह परम क्षमाशील, परम सहनशील छन् ।

لِلَّذِيْنَ يُؤْلُوْنَ مِنْ نِّسَآئِهِمْ تَرَبُّصُ اَرْبَعَةِ اَشْهُرٍ ۚ فَاِنْ فَآءُوْ فَاِنَّ اللّٰهَ غَفُوْرٌ رَّحِيْمٌ ﴿٢٢٧﴾

२२७.ती व्यक्तिहरूका निम्ति प्रतिक्षाको (सर्वाधिक) म्याद चार महिनाको रहनेछ; जसले आफ्ना पत्नीहरूबाट (परहेज गर्ने) प्रतिज्ञा गर्छन् । त्यसपछि यदि तिनीहरू (प्रतिज्ञा समाप्त गरी) फर्कन्छन् भने, निश्चय नै, अल्लाह परम क्षमाशील, परम दानशील छन् ।

وَاِنْ عَزَمُوا الطَّلَاقَ فَاِنَّ اللّٰهَ سَمِيْعٌ عَلِيْمٌ ﴿٢٢٨﴾

२२८.तथा यदि तिनीहरू पारपाचुके गर्ने निश्चय गर्छन् भने निस्सन्देह अल्लाह परमश्रोता, सर्वज्ञ छन् ।

وَالْمُطَلَّقٰتُ يَتَرَبَّصْنَ بِاَنْفُسِهِنَّ ثَلٰثَةَ قُرُوْٓءٍ ۗ وَلَا يَحِلُّ لَهُنَّ اَنْ يَّكْتُمْنَ مَا خَلَقَ اللّٰهُ فِيْٓ اَرْحَامِهِنَّ اِنْ كُنَّ يُؤْمِنَّ بِاللّٰهِ وَالْيَوْمِ الْاٰخِرِ ۗ وَبُعُوْلَتُهُنَّ اَحَقُّ بِرَدِّهِنَّ فِيْ ذٰلِكَ اِنْ اَرَادُوْٓا اِصْلَاحًا ۗ وَلَهُنَّ مِثْلُ الَّذِيْ عَلَيْهِنَّ بِالْمَعْرُوْفِ ۪ وَلِلرِّجَالِ عَلَيْهِنَّ دَرَجَةٌ ۗ وَاللّٰهُ عَزِيْزٌ حَكِيْمٌ ﴿٢٢٩﴾

ع ٢٨

२२९.तथा पारपाचुके प्राप्त महिलाहरूले तीनपटक रजस्वलाको अवधिसम्म प्रतिक्षा गरुन् । तथा यदि तिनीहरूलाई अल्लाह र अन्तिम दिनप्रति विश्वास रहेमा जुन कुरा अल्लाहले तिनीहरूका गर्भमा सृष्टि गरेका छन् त्यस कुरालाई लुकाउनु तिनीहरूका निम्ति न्यायोचित हुनेछैन । तथा यदि तिनीहरूका पतिहरूले त्यस अवधिमा पुनर्मिलनको इच्छा गरेमा तिनीहरूलाई पुनर्ग्रहण गर्ने ठूलो अधिकार तिनीहरूका पतिहरूलाई प्राप्त छ । तथा तिनीहरूलाई (महिलाहरूलाई) उनीहरूमाथि (पुरुषहरूमाथि) नियमानुसार पुरुषसरह समान अधिकारहरू प्राप्त छन् । परन्तु पुरुषहरूलाई तिनीहरूमाथि एउटा दर्जा प्राप्त छ । तथा अल्लाह सर्वशक्तिमान, सर्वज्ञ छन् ।

اَلطَّلَاقُ مَرَّتٰنِ ۪ فَاِمْسَاكٌۢ بِمَعْرُوْفٍ

२३०.यस प्रकारको तलाक (पारपाचुके) दुईपटक (उच्चारित) हुन सक्नेछ;

اَوْ تَسْرِيْحٌۢ بِاِحْسَانٍ ۭ وَلَا يَحِلُّ لَكُمْ اَنْ تَاْخُذُوْا مِمَّآ اٰتَيْتُمُوْھُنَّ شَـيْـــًٔـا اِلَّآ اَنْ يَّخَافَآ اَلَّا يُقِيْمَا حُدُوْدَ اللّٰهِ ۭ فَاِنْ خِفْتُمْ اَلَّا يُقِيْمَا حُدُوْدَ اللّٰهِ ۙ فَلَا جُنَاحَ عَلَيْھِمَا فِيْمَا افْتَدَتْ بِهٖ ۭ تِلْكَ حُدُوْدُ اللّٰهِ فَلَا تَعْتَدُوْھَا ۚ وَمَنْ يَّتَعَدَّ حُدُوْدَ اللّٰهِ فَاُولٰۗىِٕكَ ھُمُ الظّٰلِمُوْنَ ۝

त्यसपश्चात् या त तिनीहरूलाई उचित ढंगले रोकेर राख्नु पर्नेछ अथवा सदव्यवहारका साथ विदा गर्नु पर्नेछ । तथा तिमीहरूले उनीहरूलाई (पत्नीहरूलाई) प्रदान गरिसकेका वस्तुहरूबाट कुनै कुरा फर्काएर लिनु तिमीहरूका निम्ति तबसम्म न्यायसंगत हुनेछैन जबसम्म दुवैलाई अल्लाहद्वारा निर्धारित सीमाहरूको पालना उनीहरूद्वारा हुनसक्नेछैन भन्ने आशङ्का नहोस् । परन्तु, यदि तिनीहरूले अल्लाहद्वारा निर्धारित सीमाहरूको पालना गर्नसक्नेछैनन् भन्ने आशङ्का तिमीहरूलाई भयो भने आफ्नु छुट्कारा निम्ति जे जति उसले (महिलाले) तिर्नेछ त्यसप्रति तिनीहरू दुवैलाई कुनै पाप लाग्नेछैन । यी अल्लाहद्वारा निर्धारित सीमाहरू हुन्, त्यसकारण यिनीहरूको उल्लङ्घन नगर । तथा जसले अल्लाहद्वारा निर्धारित सीमाहरूको उल्लङ्घन गर्छन्, तिनीहरू नै अत्याचारी हुन् ।

فَاِنْ طَلَّقَهَا فَلَا تَحِلُّ لَهٗ مِنْۢ بَعْدُ حَتّٰى تَنْكِحَ زَوْجًا غَيْرَهٗ ۭ فَاِنْ طَلَّقَهَا فَلَا جُنَاحَ عَلَيْهِمَآ اَنْ يَّتَرَاجَعَآ اِنْ ظَنَّآ اَنْ يُّقِيْمَا حُدُوْدَ اللّٰهِ ۭ وَتِلْكَ حُدُوْدُ اللّٰهِ يُبَيِّنُهَا لِقَوْمٍ يَّعْلَمُوْنَ ۝

२३१. तथा उसले उसलाई यदि (तेश्रोपटक) तलाक (पारपाचुके) दियो भने उसका निम्ति त्यो (महिला) तबसम्म वैध हुनेछैन जबसम्म उसले अर्को पुरुषसँग विवाह गर्दिन । तथा यदि उसले (पनि) त्यसलाई पारपाचुके दियो भने अल्लाहद्वारा निर्धारित सीमाहरूको पालना गर्न सक्ने दृढता दुवैमा रहेमा तिनीहरूको पुनर्मिलनमा तिनीहरूलाई कुनै पाप लाग्ने छैन । तथा यी अल्लाहद्वारा -निर्धारित) सीमाहरू हुन् जसलाई उनले ज्ञानवान व्यक्तिहरूका निम्ति स्पष्ट रूपमा वर्णन गर्छन् ।

وَاِذَا طَلَّقْتُمُ النِّسَاۗءَ فَبَلَغْنَ اَجَلَهُنَّ فَاَمْسِكُوْھُنَّ بِمَعْرُوْفٍ اَوْ سَرِّحُوْھُنَّ

२३२. तथा जब तिमीहरूले आफ्ना पत्नीहरू-लाई तलाक (पारपाचुके)* दिन्छौ र तिनीहरू आफ्नो (निर्धारित) म्यादको अन्तातिर पुग्छन्, तब या त तिनीहरूलाई

* फर्काउन सकिने पारपाचुके ।

उचित रूपमा रोकेर राख अथवा तिनीहरूलाई न्यायसंगत रूपमा विदा गर, तथा तिनीहरूलाई कष्ट दिने अभिप्रायले अन्यायपुर्वक रोकेर नराख । तथा जसले त्यसो गर्छ उसले निश्चय नै आफ्नै ज्यानमाथि अन्याय गर्छ । तथा अल्लाहका निर्देशनहरूलाई उपहासको साधन नबनाऊ र जुन अनुग्रह तिमीहरूप्रति अल्लाहले गरेका छन् र जुन किताब तथा तथ्यज्ञान तिमीहरूप्रति अवत्तीर्ण गरेका छन् त्यसद्वारा उनले तिमीहरूलाई अर्ती दिन्छन्, तिनलाई स्मरण गर । तथा अल्लाहको डर राख्ने गर र अल्लाहले प्रत्येक कुरालाई राम्ररी जान्दछन् भनी ज्ञात राख ।

بِمَعْرُوْفٍ وَّلَا تُمْسِكُوْهُنَّ ضِرَارًا لِّتَعْتَدُوْا
وَمَنْ يَّفْعَلْ ذٰلِكَ فَقَدْ ظَلَمَ نَفْسَهٗ ؕ وَلَا
تَتَّخِذُوْٓا اٰيٰتِ اللّٰهِ هُزُوًا ؗ وَّاذْكُرُوْا
نِعْمَتَ اللّٰهِ عَلَيْكُمْ وَمَآ اَنْزَلَ عَلَيْكُمْ
مِّنَ الْكِتٰبِ وَالْحِكْمَةِ يَعِظُكُمْ بِهٖ ؕ وَاتَّقُوا
اللّٰهَ وَاعْلَمُوْٓا اَنَّ اللّٰهَ بِكُلِّ شَيْءٍ عَلِيْمٌ ﴿٢٣١﴾

२३३.तथा जब तिमीहरूले महिलाहरूलाई पारपाचुके दिन्छौ र तिनीहरू आफ्नो म्यादको अन्तमा पुग्छन्, तब यदि तिनीहरू सभ्य ढंगले परस्पर सहमत हुन्छन् भने तिनीहरूलाई आफ्ना पतिहरूसंग विवाह गर्नबाट नरोक । यो उपदेश तिमीहरूमध्ये त्यस व्यक्तिका निम्ति हो जसले अल्लाह तथा अन्तिम दिनप्रति विश्वास राख्छ । यो कुरो तिमीहरूका निम्ति अधिक फलदायक तथा अधिक पवित्र छ; तथा अल्लाह जान्दछन्, परन्तु तिमीहरू जान्दैनौ ।

وَاِذَا طَلَّقْتُمُ النِّسَآءَ فَبَلَغْنَ اَجَلَهُنَّ فَلَا
تَعْضُلُوْهُنَّ اَنْ يَّنْكِحْنَ اَزْوَاجَهُنَّ اِذَا
تَرَاضَوْا بَيْنَهُمْ بِالْمَعْرُوْفِ ؕ ذٰلِكَ
يُوْعَظُ بِهٖ مَنْ كَانَ مِنْكُمْ يُؤْمِنُ بِاللّٰهِ وَ
الْيَوْمِ الْاٰخِرِ ؕ ذٰلِكُمْ اَزْكٰى لَكُمْ وَاَطْهَرُ ؕ وَ
اللّٰهُ يَعْلَمُ وَاَنْتُمْ لَا تَعْلَمُوْنَ ﴿٢٣٢﴾

२३४.तथा आमाहरूले आफ्ना सन्तानहरूलाई पूरा दुईवर्ष दूध पियाउन्, यो कुरो तिनीहरूका निम्ति हो जसले दूध पियाउने म्याद पूर्ण गर्न चाहन्छ । तथा जसको सन्तान हो त्यस व्यक्तिमाथि तिनीहरूको (आमाहरूको) यथोचित खान-पिन तथा वस्त्रको जिम्मेवारी रहनेछ । कुनै ज्यानमाथि उसको सामर्थ्यभन्दा अधिक बोझ हालिँदैन । आमाले उसको सन्तानका कारण बाबुलाई कष्ट नदेओस् न त आमालाई उसको सन्तानका कारण बाबुले कुनै कष्ट देओस् । यसै प्रकार जसको

وَالْوَالِدٰتُ يُرْضِعْنَ اَوْلَادَهُنَّ حَوْلَيْنِ
كَامِلَيْنِ لِمَنْ اَرَادَ اَنْ يُّتِمَّ الرَّضَاعَةَ ؕ وَ
عَلَى الْمَوْلُوْدِ لَهٗ رِزْقُهُنَّ وَكِسْوَتُهُنَّ
بِالْمَعْرُوْفِ ؕ لَا تُكَلَّفُ نَفْسٌ اِلَّا وُسْعَهَا ۚ
لَا تُضَآرَّ وَالِدَةٌ ۢ بِوَلَدِهَا وَلَا مَوْلُوْدٌ لَّهٗ
بِوَلَدِهٖ ۚ وَعَلَى الْوَارِثِ مِثْلُ ذٰلِكَ ۚ
فَاِنْ اَرَادَا فِصَالًا عَنْ تَرَاضٍ مِّنْهُمَا وَ
تَشَاوُرٍ فَلَا جُنَاحَ عَلَيْهِمَا ؕ وَاِنْ اَرَدْتُّمْ
اَنْ تَسْتَرْضِعُوْٓا اَوْلَادَكُمْ فَلَا جُنَاحَ

عَلَيْكُمْ اِذَا سَلَّمْتُمْ مَّآ اٰتَيْتُمْ بِالْمَعْرُوْفِ ۗ وَاتَّقُوا اللّٰهَ وَاعْلَمُوْٓا اَنَّ اللّٰهَ بِمَا تَعْمَلُوْنَ بَصِيْرٌ ﴿٢٣٣﴾

सन्तान हो उसलाई आमाले उसको सन्तानका कारण दु:ख नदेओस् । यही कर्तव्य वारिसको पनि रहनेछ । तथा यदि तिनीहरू दुवै परस्पर सहमति र सल्लाहद्वारा दूध छुटाउन राजी भएमा तिनीहरूलाई कुनै पाप लाग्नेछैन । तथा यदि पूर्वनिर्धारित पारिश्रमिक न्यायोचितरूपमा दिई तिमीहरूले आफ्ना सन्तानहरूका निम्ति धाईआमा राखेमा तिमीहरूलाई कुनै दोष लाग्नेछैन । तथा अल्लाहको डर राख र तिमीहरू जुन कार्य गर्दछौ त्यसलाई अल्लाहले निश्चय नै देख्छन् भनी जान ।

وَالَّذِيْنَ يُتَوَفَّوْنَ مِنْكُمْ وَيَذَرُوْنَ اَزْوَاجًا يَّتَرَبَّصْنَ بِاَنْفُسِهِنَّ اَرْبَعَةَ اَشْهُرٍ وَّعَشْرًا ۚ فَاِذَا بَلَغْنَ اَجَلَهُنَّ فَلَا جُنَاحَ عَلَيْكُمْ فِيْمَا فَعَلْنَ فِيْٓ اَنْفُسِهِنَّ بِالْمَعْرُوْفِ ۗ وَاللّٰهُ بِمَا تَعْمَلُوْنَ خَبِيْرٌ ﴿٢٣٤﴾

२३५. तथा तिमीहरूमध्ये जसको मृत्यु हुन्छ र उनीहरू आफुपछि पत्नीहरू छाडेर जान्छन्, तिनीहरूले (पत्नीहरूले) आफूलाई चार महिना र दस दिन रोकेर राखून् । तथा जब तिनीहरूले आफ्नो निर्धारित म्याद पूरा गर्छन् तब आफ्ना निम्ति न्यायोचित रूपमा जे गर्छन् त्यसको पाप तिमीहरूलाई लाग्नेछैन । तथा तिमीहरू जे गर्दछौ त्यसप्रति अल्लाह विदित छन् ।

وَلَا جُنَاحَ عَلَيْكُمْ فِيْمَا عَرَّضْتُمْ بِهٖ مِنْ خِطْبَةِ النِّسَآءِ اَوْ اَكْنَنْتُمْ فِيْٓ اَنْفُسِكُمْ ۗ عَلِمَ اللّٰهُ اَنَّكُمْ سَتَذْكُرُوْنَهُنَّ وَلٰكِنْ لَّا تُوَاعِدُوْهُنَّ سِرًّا اِلَّآ اَنْ تَقُوْلُوْا قَوْلًا مَّعْرُوْفًا ۗ وَلَا تَعْزِمُوْا عُقْدَةَ النِّكَاحِ حَتّٰى يَبْلُغَ الْكِتٰبُ اَجَلَهٗ ۗ وَاعْلَمُوْٓا اَنَّ اللّٰهَ يَعْلَمُ مَا فِيْٓ اَنْفُسِكُمْ فَاحْذَرُوْهُ ۚ وَاعْلَمُوْٓا اَنَّ اللّٰهَ غَفُوْرٌ حَلِيْمٌ ﴿٢٣٥﴾

२३६. तथा यदि (ती) महिलाहरूसँग विवाह गर्ने सम्बन्धि कुनै सङ्केत गरेमा अथवा मनमा (त्यो इच्छा) पालेमा तिमीहरूलाई कुनै दोप लाग्नेछैन । तिमीहरूले तिनीहरूलाई (त्यस सम्वन्धमा) स्मरण गर्नेछौ भनी अल्लाह जान्दछन् । परन्तु कुनै न्यायसंगत कुरावाहेक तिनीहरूसँग गोप्यरूपमा कुनै प्रकारको वाचा-बन्धन नगर । तथा जवसम्म निर्धारित म्यादको अन्त हुँदैन तवसम्म वैवाहिक सम्वन्ध जोड्ने निश्चित नगर । तथा तिमीहरूको मनमा भएका कुरालाई अल्लाहले जान्दछन् भनी जान, अत: उनीवाट सावधान रहने गर । तथा अल्लाह परम क्षमाशील, परम सहनशील छन् भनी जान ।

لَا جُنَاحَ عَلَيْكُمْ اِنْ طَلَّقْتُمُ النِّسَآءَ

२३७. महिलाहरूलाई स्पर्श गर्नुअघि नै

مَا لَمْ تَمَسُّوهُنَّ أَوْ تَفْرِضُوا لَهُنَّ فَرِيضَةً ۚ وَمَتِّعُوهُنَّ عَلَى الْمُوسِعِ قَدَرُهُ وَعَلَى الْمُقْتِرِ قَدَرُهُ مَتَاعًا بِالْمَعْرُوفِ ۖ حَقًّا عَلَى الْمُحْسِنِينَ ﴿٢٣٦﴾

अथवा तिनीहरूका तिम्ति दाईजो (महर) निर्धारित गर्नु अघि नै यदि तिमीहरूले तिनीहरूलाई पारपाचुके (तलाक) दिएमा तिमीहरूलाई कुनै पाप लाग्नेछैन । परन्तु तिनीहरूलाई उचित रूपमा केही (वस्तुहरू) प्रदान गर– धनाढ्यले आफ्नो सामर्थ्यानुसार तथा निर्धनले आफ्नो सामर्थ्यानुसार– उचित रूपमा लाभ पुऱ्याउनु सत्कर्मीहरूका निम्ति कर्तव्यस्वरूप हो ।

وَإِنْ طَلَّقْتُمُوهُنَّ مِنْ قَبْلِ أَنْ تَمَسُّوهُنَّ وَقَدْ فَرَضْتُمْ لَهُنَّ فَرِيضَةً فَنِصْفُ مَا فَرَضْتُمْ إِلَّا أَنْ يَعْفُونَ أَوْ يَعْفُوَ الَّذِي بِيَدِهِ عُقْدَةُ النِّكَاحِ ۚ وَأَنْ تَعْفُوا أَقْرَبُ لِلتَّقْوَىٰ ۚ وَلَا تَنْسَوُا الْفَضْلَ بَيْنَكُمْ ۚ إِنَّ اللَّهَ بِمَا تَعْمَلُونَ بَصِيرٌ ﴿٢٣٧﴾

२३८.तथा यदि तिमीहरूले तिनीहरूलाई स्पर्श गर्नुअघि नै परन्तु तिनीहरूका निम्ति दाईजो निर्धारित भइसकेको अवस्थामा पारपाचुके दियौ भने, तिनीहरूले स्वयम् अथवा जसको हातमा विवाह बन्धन छ उसले क्षमादान नगरेमा निर्धारित दाईजोको आधी (तिमीहरूले प्रदान गर्नु पर्नेछ) । तथा तिमीहरूले क्षमादान गर्नु नै धर्मपरायणताको अधिक निकट हुनेछ । तथा तिमीहरू परस्पर परोपकार गर्न नबिर्स । तिमीहरू जे गर्दछौ निश्चय नै अल्लाह त्यसप्रति दृष्टि राख्छन् ।

حَافِظُوا عَلَى الصَّلَوَاتِ وَالصَّلَاةِ الْوُسْطَىٰ وَقُومُوا لِلَّهِ قَانِتِينَ ﴿٢٣٨﴾

२३९.सबै नमाजहरूप्रति र मध्य नमाजप्रति ध्यान राख, तथा अल्लाहका सामु आज्ञाकारिताका साथ खडा होऊ ।

فَإِنْ خِفْتُمْ فَرِجَالًا أَوْ رُكْبَانًا ۖ فَإِذَا أَمِنْتُمْ فَاذْكُرُوا اللَّهَ كَمَا عَلَّمَكُمْ مَا لَمْ تَكُونُوا تَعْلَمُونَ ﴿٢٣٩﴾

२४०.परन्तु यदि तिमीहरू भयको अवस्थामा रहेमा, पैदल अथवा सवारीको हालतमा नै (आफ्नो नमाज पढ) । पुन: जब तिमीहरूलाई सुरक्षा प्राप्त हुन्छ तब अल्लाहलाई स्मरण गर जसरी उनले तिमीहरूलाई त्यो कुरा सिकाएका छन् जुन कुरा तिमीहरूलाई थाहा थिएन ।

وَالَّذِينَ يُتَوَفَّوْنَ مِنْكُمْ وَيَذَرُونَ أَزْوَاجًا وَصِيَّةً لِأَزْوَاجِهِمْ مَتَاعًا إِلَى الْحَوْلِ غَيْرَ إِخْرَاجٍ ۚ فَإِنْ خَرَجْنَ فَلَا جُنَاحَ عَلَيْكُمْ فِي مَا فَعَلْنَ فِي أَنْفُسِهِنَّ مِنْ مَعْرُوفٍ ۗ وَاللَّهُ عَزِيزٌ حَكِيمٌ ﴿٢٤٠﴾

२४१.तथा तिमीहरूमध्ये जसको मृत्यु हुन्छ र आफ्ना पत्नीहरूलाई छाडेर जान्छन तिनीहरूले आफना पत्नीहरूका निम्ति एक बर्षको लागि लाभ पुऱ्याउने वसियत गरेर जाउन् जसबाट (तिनीहरूलाई) ननिकालियोस् परन्तु यदि

तिनीहरू (आफै) निस्केर जान्छन् र आफना निम्ति कुनै उचित कार्य गर्छन् भने त्यसप्रति तिमीहरूलाई दोष लाग्नेछैन । तथा अल्लाह सर्वशक्तिवान्, तत्त्वज्ञ छन्

وَلِلْمُطَلَّقٰتِ مَتَاعٌۢ بِالْمَعْرُوْفِ ؕ حَقًّا عَلَى الْمُتَّقِيْنَ ﴿٢٤١﴾

२४२.तथा पारपाचुके प्राप्त महिलाहरूलाई (पनि) जति न्यायसंगत हुन्छ त्यत्ति सामानहरू प्रदान गर्नु आवश्यक छ । यो कुरो अल्लाहसित डराउनेहरूका निम्ति कर्त्तव्य-स्वरूप छ ।

كَذٰلِكَ يُبَيِّنُ اللّٰهُ لَكُمْ اٰيٰتِهٖ لَعَلَّكُمْ تَعْقِلُوْنَ ﴿٢٤٢﴾

२४३.यसै प्रकार अल्लाहले आफना निर्देशनहरू तिमीहरूका निम्ति स्पष्टरूपमा वर्णन गर्छन्- ताकि तिमीहरू बुझ्न सक ।

اَلَمْ تَرَ اِلَى الَّذِيْنَ خَرَجُوْا مِنْ دِيَارِهِمْ وَهُمْ اُلُوْفٌ حَذَرَ الْمَوْتِ ۪ فَقَالَ لَهُمُ اللّٰهُ مُوْتُوْا ۫ ثُمَّ اَحْيَاهُمْ ؕ اِنَّ اللّٰهَ لَذُوْ فَضْلٍ عَلَى النَّاسِ وَلٰكِنَّ اَكْثَرَ النَّاسِ لَا يَشْكُرُوْنَ ﴿٢٤٣﴾

२४४.के तिमीलाई ती व्यक्तिहरूबारे केही थाहा छैन, जुन व्यक्तिहरू हजारौंको संख्यामा थिए र मृत्युको डरले आफना घरहरूबाट निस्केका थिए? तब अल्लाहले तिनीहरूलाई भने–'मर'; पुन: उनले तिनीहरूलाई जीवित गरे । निस्सन्देह, अल्लाह मानिसहरूप्रति अति कृपालु छन् । परन्तु अधिकतर मानिसहरू कृतज्ञ छैनन् ।

وَقَاتِلُوْا فِيْ سَبِيْلِ اللّٰهِ وَاعْلَمُوْٓا اَنَّ اللّٰهَ سَمِيْعٌ عَلِيْمٌ ﴿٢٤٤﴾

२४५.अल्लाहका मार्गमा रण गर तथा के ज्ञात राख भने अल्लाह सर्वश्रोता, सर्वज्ञ छन् ।

مَنْ ذَا الَّذِيْ يُقْرِضُ اللّٰهَ قَرْضًا حَسَنًا فَيُضٰعِفَهٗ لَهٗٓ اَضْعَافًا كَثِيْرَةً ؕ وَاللّٰهُ يَقْبِضُ وَيَبْصُۜطُ ۪ وَاِلَيْهِ تُرْجَعُوْنَ ﴿٢٤٥﴾

२४६.कुन व्यक्ति यस्तो छ जसले अल्लाहलाई उत्तम ऋण दिन्छ, ताकि उनले उसका निम्ति अधिकभन्दा अधिक वृद्धि गरुन्? तथा अल्लाह ग्रहण गर्छन् र वृद्धि गर्छन्, तथा तिमीहरूलाई उनीतर्फ नै फर्काइनेछ ।

اَلَمْ تَرَ اِلَى الْمَلَاِ مِنْۢ بَنِيْٓ اِسْرَآءِيْلَ مِنْۢ بَعْدِ مُوْسٰى ۘ اِذْ قَالُوْا لِنَبِيٍّ لَّهُمُ ابْعَثْ لَنَا مَلِكًا نُّقَاتِلْ فِيْ سَبِيْلِ اللّٰهِ ؕ قَالَ هَلْ عَسَيْتُمْ اِنْ كُتِبَ عَلَيْكُمُ الْقِتَالُ

२४७.के तिमीलाई मूसापछिका इजरायलका सन्तानहरूका मुखियाहरूबारे थाहा छैन? जब तिनीहरूले आफ्ना एकजना नबीलाई (सिद्धपुरुषलाई) भने: "हाम्रा निम्ति एकजना राजा नियुक्त गर ताकि हामी

أَلَّا تُقَاتِلُوا ۖ قَالُوا وَمَا لَنَا أَلَّا نُقَاتِلَ فِي سَبِيلِ اللَّهِ وَقَدْ أُخْرِجْنَا مِن دِيَارِنَا وَأَبْنَائِنَا ۖ فَلَمَّا كُتِبَ عَلَيْهِمُ الْقِتَالُ تَوَلَّوْا إِلَّا قَلِيلًا مِّنْهُمْ ۗ وَاللَّهُ عَلِيمٌ بِالظَّالِمِينَ ﴿٢٤٦﴾

अल्लाहका मार्गमा रण गर्न सकौं?" उनले भने: "जब युद्ध तिमीहरूप्रति अनिवार्य हुनेछ तब तिमीहरूले रण नगर्ने त छैनौ?" उनीहरूले भने: "जब हामीहरूलाई हाम्रा घरहरू र सन्तानहरूबाट निष्कासित गरिएको छ भने हामी अल्लाहका मार्गमा रण किन गर्दैनौं?" परन्तु जब तिनीहरूप्रति युद्ध अनिवार्य गरियो तब तिनीहरूमध्ये केही व्यक्तिहरूबाहेक सबै विमुख भएर पछि हटे । तथा अल्लाहले सीमोल्लङ्घनकारीहरूलाई राम्ररी चिन्दछन् ।

وَقَالَ لَهُمْ نَبِيُّهُمْ إِنَّ اللَّهَ قَدْ بَعَثَ لَكُمْ طَالُوتَ مَلِكًا ۚ قَالُوا أَنَّىٰ يَكُونُ لَهُ الْمُلْكُ عَلَيْنَا وَنَحْنُ أَحَقُّ بِالْمُلْكِ مِنْهُ وَلَمْ يُؤْتَ سَعَةً مِّنَ الْمَالِ ۚ قَالَ إِنَّ اللَّهَ اصْطَفَاهُ عَلَيْكُمْ وَزَادَهُ بَسْطَةً فِي الْعِلْمِ وَالْجِسْمِ ۖ وَاللَّهُ يُؤْتِي مُلْكَهُ مَن يَشَاءُ ۚ وَاللَّهُ وَاسِعٌ عَلِيمٌ ﴿٢٤٧﴾

२४८. तथा तिनीहरूका नबीले तिनीहरूलाई भने: "अल्लाहले तालूतलाई तिमीहरूका निम्ति राजा नियुक्त गरेका छन् ।" उनीहरूले भने: "उसलाई हामीहरूमाथि राज्य कसरी प्राप्त हुनसक्छ र जबकि हामीहरू उभन्दा राज्यका अधिक हकदार छौं तथा उसलाई प्रशस्त सम्पत्ति (पनि) प्रदान गरिएको छैन? उनले भने: "वास्तवमा अल्लाहले उसलाई तिमीहरूमाथि चुनेका छन् तथा उसलाई पर्याप्त ज्ञान तथा शारीरिक शक्ति प्रदान गरेका छन् ।" तथा अल्लाहले जसलाई इच्छा गर्छन् राज्य प्रदान गर्छन् तथा अल्लाह सर्वसमृद्ध, सर्वज्ञ छन् ।

وَقَالَ لَهُمْ نَبِيُّهُمْ إِنَّ آيَةَ مُلْكِهِ أَن يَأْتِيَكُمُ التَّابُوتُ فِيهِ سَكِينَةٌ مِّن رَّبِّكُمْ وَبَقِيَّةٌ مِّمَّا تَرَكَ آلُ مُوسَىٰ وَآلُ هَارُونَ تَحْمِلُهُ الْمَلَائِكَةُ ۚ إِنَّ فِي ذَٰلِكَ لَآيَةً لَّكُمْ إِن كُنتُم مُّؤْمِنِينَ ﴿٢٤٨﴾

२४९. तथा तिनीहरूका नबीले तिनीहरूलाई भने: "उसको राज्यको चिह्न के हो भने तिमीहरूलाई एउटा यस्तो हृदय प्रदान गरिनेछ जसमा तिमीहरूका प्रभका तर्फबाट शान्ति हुनेछ तथा त्यस (उत्तम) वस्तुको शेपाशं हुनेछ जुन मुसा तथा हारुनका वशंधरले छाडेर गए– जसलाई फरिस्ताहरूले सम्हालेका हुनेछन् । निश्चय नै, यदि तिमीहरू विश्वासी हौ भने यसमा तिमीहरूका निम्ति एउटा चिह्न छ ।

فَلَمَّا فَصَلَ طَالُوتُ بِالْجُنُودِ ۙ قَالَ إِنَّ

२५०. तथा जब तालूत सेनाहरूका साथ प्रस्थान गरे तब उनले भने: "निश्चय नै

اللَّهَ مُبْتَلِيكُم بِنَهَرٍ فَمَن شَرِبَ مِنْهُ فَلَيْسَ مِنِّي وَمَن لَّمْ يَطْعَمْهُ فَإِنَّهُ مِنِّي إِلَّا مَنِ اغْتَرَفَ غُرْفَةً بِيَدِهِ ۚ فَشَرِبُوا مِنْهُ إِلَّا قَلِيلًا مِّنْهُمْ ۚ فَلَمَّا جَاوَزَهُ هُوَ وَالَّذِينَ آمَنُوا مَعَهُ قَالُوا لَا طَاقَةَ لَنَا الْيَوْمَ بِجَالُوتَ وَجُنُودِهِ ۚ قَالَ الَّذِينَ يَظُنُّونَ أَنَّهُم مُّلَاقُو اللَّهِ كَم مِّن فِئَةٍ قَلِيلَةٍ غَلَبَتْ فِئَةً كَثِيرَةً بِإِذْنِ اللَّهِ ۗ وَاللَّهُ مَعَ الصَّابِرِينَ ﴿٢٤٩﴾

अल्लाहले एउटा नदीद्वारा तिमीहरूलाई जाँच्नेछन् । अत: जसले त्यसबाट पानी पिउने छ त्यो व्यक्ति मेरो रहनेछैन, र जसले त्यसबाट चाख्नेछैन त्यो निश्चयपूर्वक मेरो रहनेछ, सिवाय त्यो व्यक्ति जसले आफ्ना हातले एक अँजुली मात्र ग्रहण गर्नेछ । परन्तु तिनीहरूमध्ये केही व्यक्तिहरूबाहेक सबैले त्यसबाट पानी पिए । तथा जब तिनले र तिनका विश्वासी साथीहरूले त्यो नदी तरे तब तिनीहरूले भने: "आज जालूत तथा उसका सेनाहरूविरुद्ध लड्ने शक्ति हामीमा छैन । परन्तु जसले निश्चयपूर्वक (एकदिन) अल्लाहसँग साक्षात हुने विश्वास राख्थे तिनीहरूले भने: "कति यस्ता साना दलहरू छन् जसले अल्लाहको आदेशद्वारा ठूला दलहरूमाथि विजय प्राप्त गरेकाछन् ! तथा अल्लाह धैर्यवानहरूसित छन् ।"

وَلَمَّا بَرَزُوا لِجَالُوتَ وَجُنُودِهِ قَالُوا رَبَّنَا أَفْرِغْ عَلَيْنَا صَبْرًا وَثَبِّتْ أَقْدَامَنَا وَانصُرْنَا عَلَى الْقَوْمِ الْكَافِرِينَ ﴿٢٥٠﴾

२५१.तथा जब तिनीहरू जालूत तथा उसका सेनाहरूसगं लडन प्रस्थान गरे तब तिनीहरूले भने: "हे हाम्रा प्रतिपालक, हामीप्रति धैर्यधारणको शक्ति अवतीर्ण गर, तथा हाम्रा कदमहरू स्थिर राख तथा अविश्वासी व्यक्तिहरूका विरुद्ध हामीलाई सहयोग गर ।"

فَهَزَمُوهُم بِإِذْنِ اللَّهِ وَقَتَلَ دَاوُودُ جَالُوتَ وَآتَاهُ اللَّهُ الْمُلْكَ وَالْحِكْمَةَ وَعَلَّمَهُ مِمَّا يَشَاءُ ۗ وَلَوْلَا دَفْعُ اللَّهِ النَّاسَ بَعْضَهُم بِبَعْضٍ لَّفَسَدَتِ الْأَرْضُ وَلَٰكِنَّ اللَّهَ ذُو فَضْلٍ عَلَى الْعَالَمِينَ ﴿٢٥١﴾

२५२.अत: तिनीहरूले अल्लाहको आदेशानुसार उनीहरूलाई परास्त गरे, तथा दाऊदले जालूतको हत्या गरे, तथा अल्लाहले उनलाई राज्य र ज्ञान प्रदान गरे तथा उनले जे इच्छा गरे त्यो उनलाई सिकाएं । तथा यदि अल्लाहले मानिसलाई परस्पर रोकेर राख्दैनथे भने संसार फसादपूर्ण हुने थियो । परन्तु अल्लाह (सम्पूर्ण) मानवजातिप्रति अति कृपालु छन् ।

تِلْكَ آيَاتُ اللَّهِ نَتْلُوهَا عَلَيْكَ بِالْحَقِّ ۚ وَإِنَّكَ لَمِنَ الْمُرْسَلِينَ ﴿٢٥٢﴾

२५३.यी अल्लाहका चिह्नहरू हुन् जसलाई; हामी सत्यका साथ तिम्रा सामु पढेर सुनाउँछौ । निश्चय नै तिमी सन्देशवाहक-

हरूमध्ये (एक) हौ ।

تِلْكَ الرُّسُلُ فَضَّلْنَا بَعْضَهُمْ عَلَىٰ بَعْضٍ ۘ مِّنْهُم مَّن كَلَّمَ اللَّهُ ۖ وَرَفَعَ بَعْضَهُمْ دَرَجَاتٍ ۚ وَآتَيْنَا عِيسَى ابْنَ مَرْيَمَ الْبَيِّنَاتِ وَأَيَّدْنَاهُ بِرُوحِ الْقُدُسِ ۗ وَلَوْ شَاءَ اللَّهُ مَا اقْتَتَلَ الَّذِينَ مِن بَعْدِهِم مِّن بَعْدِ مَا جَاءَتْهُمُ الْبَيِّنَاتُ وَلَٰكِنِ اخْتَلَفُوا فَمِنْهُم مَّنْ آمَنَ وَمِنْهُم مَّن كَفَرَ ۚ وَلَوْ شَاءَ اللَّهُ مَا اقْتَتَلُوا وَلَٰكِنَّ اللَّهَ يَفْعَلُ مَا يُرِيدُ ﴿٢٥٣﴾

२५४.यी रसूलहरू (सन्देशवाहकहरू) तिनै हुन् जसमध्ये केहीलाई हामीले अन्य केहीमाथि श्रेष्ठता प्रदान गरेका छौं । अल्लाहले तिनीहरूसँग वार्ता गरे* तथा तिनीहरूमध्ये केहीलाई उच्चस्थान प्रदान गरे । तथा हामीले मरियमपुत्र इसालाई स्पष्ट दलिलहरू प्रदान गरी पवित्र आत्माद्वारा उनलाई शक्ति प्रदान गरेका थियौं । तथा यदि अल्लाहले इच्छा गरेका भए ती व्यक्तिहरू जुन तिनीहरूभन्दा पछि (आएका) थिए स्पष्ट चिह्नहरूको आगमनपश्चात् परस्पर द्वन्द गर्ने थिएनन्; परन्तु तिनीहरूमा मतभेद भयो । अत: तिनीहरूमध्ये केहीले विश्वास स्थापना गरे, तथा अन्य केहीले भने अविश्वास गरे तथा यदि अल्लाहको इच्छा रहेको भए तिनीहरू परस्पर लड्ने थिएनन्; परन्तु अल्लाहलाई जे इच्छा लाग्छ त्यही गर्छन् ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا أَنفِقُوا مِمَّا رَزَقْنَاكُم مِّن قَبْلِ أَن يَأْتِيَ يَوْمٌ لَّا بَيْعٌ فِيهِ وَلَا خُلَّةٌ وَلَا شَفَاعَةٌ ۗ وَالْكَافِرُونَ هُمُ الظَّالِمُونَ ﴿٢٥٤﴾

२५५.हे विश्वासीजन हो ! हामीले तिमीहरू-लाई प्रदान गरेका (वस्तुहरू)बाट त्यस दिनको आगमनभन्दा अघि नै खर्च गर जुन दिन न कुनै प्रकारको किनबेच, न मित्रता न सिफारिश नै काम लाग्नेछ । तथा ती अविश्वासीहरू नै हुन् जसले (आफ्नै) अनिष्ठ गर्छन् ।

اللَّهُ لَا إِلَٰهَ إِلَّا هُوَ الْحَيُّ الْقَيُّومُ ۚ لَا تَأْخُذُهُ سِنَةٌ وَلَا نَوْمٌ ۚ لَّهُ مَا فِي السَّمَاوَاتِ وَمَا فِي الْأَرْضِ ۗ مَن ذَا الَّذِي يَشْفَعُ عِندَهُ إِلَّا بِإِذْنِهِ ۚ يَعْلَمُ مَا بَيْنَ أَيْدِيهِمْ وَمَا خَلْفَهُمْ ۖ وَلَا يُحِيطُونَ بِشَيْءٍ مِّنْ عِلْمِهِ إِلَّا بِمَا شَاءَ ۚ وَسِعَ كُرْسِيُّهُ السَّمَاوَاتِ وَ

२५६.अल्लाह (उनै हुन्), जसबाहेक कोही उपास्य छैन, अनन्त जीवनका स्वामी, स्वत: कायम तथा सबैका कायमकर्ता । न उनलाई उँघ लाग्छ न त निन्द्रा नै । आकाशमण्डलमा जे छ र पृथ्वीमा जे छ सबै उनैको हो । को छ जसले उनको अनुमतिबिना उनका जुनाफमा सिफारिस गर्न सकोस्? तिनीहरूका सामुन्ने तथा तिनीहरूका पछाडि रहेका सबै कुराहरूलाई उनले जान्दछन्, तथा

* तिनीहरूलाई एउटा नयाँ विधान प्रदान गरे ।

तिनीहरूले उनको इच्छाबिना उनको ज्ञानको कुनै अंश आवृत गर्न सक्दैनन् । उनको सिंहासन* आकाशमण्डल तथा पृथ्वीव्यापी छ; तथा तिनीहरूको हेरचाहले उनलाई थकित तुल्याउँदैन; तथा उनी नै सर्वोच्च, महान हुन् ।

الْأَرْضَ ۚ وَلَا يَئُودُهُ حِفْظُهُمَا ۚ وَهُوَ الْعَلِيُّ الْعَظِيمُ ﴿٢٥٥﴾

२५७.धर्मको मामिलामा कुनै प्रकारको जबरजस्ती हुनु हुँदैन । निश्चय नै, कुमार्गको तुलनामा सुमार्ग स्पष्टतया जाहेर भइसकेको छ । अत: त्यो व्यक्ति जसले सीमोल्लङ्घन-कारीहरूको मार्गदर्शन लाई त्यागी अल्लाह-प्रति विश्वास स्थापना गर्छ उसले निश्चय नै त्यस बलियो कडा (handle) लाई समात्यो जुन कदापि टुट्नेछैन । तथा अल्लाह नै सर्वश्रोता, सर्वज्ञ हुन् ।

لَا إِكْرَاهَ فِي الدِّينِ ۖ قَدْ تَبَيَّنَ الرُّشْدُ مِنَ الْغَيِّ ۚ فَمَنْ يَكْفُرْ بِالطَّاغُوتِ وَيُؤْمِنْ بِاللَّهِ فَقَدِ اسْتَمْسَكَ بِالْعُرْوَةِ الْوُثْقَىٰ لَا انْفِصَامَ لَهَا ۗ وَاللَّهُ سَمِيعٌ عَلِيمٌ ﴿٢٥٦﴾

२५८.अल्लाह बिश्वास स्थापना गर्ने व्यक्तिहरूका साथी हुन्, उनले तिनीहरूलाई सबै (प्रकारको) अन्धकारबाट उद्वार गरी प्रकाशतर्फ मार्गदर्शन गर्छन् । तथा ती व्यक्तिहरू जसले अविश्वास गर्छन् तिनीहरूका साथी सीमोल्लङ्घनकारीहरू हुन् जसले तिनीहरूलाई प्रकाशबाट निकाली सबै (प्रकारको) अन्धकारतर्फ लैजान्छन् । तिनीहरू नै अग्निवासी हुन्; त्यहाँ नै तिनीहरू बसोबास गर्नेछन् ।

اللَّهُ وَلِيُّ الَّذِينَ آمَنُوا يُخْرِجُهُمْ مِنَ الظُّلُمَاتِ إِلَى النُّورِ ۖ وَالَّذِينَ كَفَرُوا أَوْلِيَاؤُهُمُ الطَّاغُوتُ يُخْرِجُونَهُمْ مِنَ النُّورِ إِلَى الظُّلُمَاتِ ۗ أُولَٰئِكَ أَصْحَابُ النَّارِ ۖ هُمْ فِيهَا خَالِدُونَ ﴿٢٥٧﴾

२५९.के तिमीलाई त्यस व्यक्तिबारे केही थाहा छैन जसले इब्राहिमसँग उनका प्रतिपालकका सम्बन्धमा विवाद गरेको थियो, कारण अल्लाहले उसलाई राज्य प्रदान गरेका थिए? जब इब्राहिमले भने- "मेरा प्रतिपालक तिनै हुन् जसले जीवनदान गर्छन् तथा मृत्यु प्रदान गर्छन्",

أَلَمْ تَرَ إِلَى الَّذِي حَاجَّ إِبْرَاهِيمَ فِي رَبِّهِ أَنْ آتَاهُ اللَّهُ الْمُلْكَ إِذْ قَالَ إِبْرَاهِيمُ رَبِّيَ الَّذِي يُحْيِي وَيُمِيتُ قَالَ أَنَا أُحْيِي وَأُمِيتُ ۖ قَالَ إِبْرَاهِيمُ فَإِنَّ اللَّهَ يَأْتِي بِالشَّمْسِ مِنَ الْمَشْرِقِ فَأْتِ

---

* 'कुर्सी ( كرسى ) शब्दको अर्थ साधारणतया शक्तिको आसन अथवा सिंहासन हुन्छ । उक्त शब्दको यस अर्थको विस्तृत प्रयोग रहेको छ तथा यसले केवल ज्ञानको (अर्थ) नभएर शासनतन्त्रका अन्यान्य आवश्यकताहरूको पनि (अर्थ) दिन्छ ।

بِهَا مِنَ الْمَغْرِبِ فَبُهِتَ الَّذِي كَفَرَ ۗ وَاللَّهُ لَا يَهْدِي الْقَوْمَ الظَّالِمِينَ ﴿٢٥٨﴾

उसले भन्यो -"म पनि जीवनदान गर्छु तथा मृत्यु प्रदान गर्छु ।" इब्राहिमले भने "ठिक छ, अल्लाहले सूर्यलाई पूर्वबाट उदय गराउछन् तिमी त्यसलाई पश्चिमबाट उदय गराऊ ।" त्यसपछि त्यो अविश्वासी निरुत्तर भयो । तथा अत्याचारीहरूलाई अल्लाहले मार्गदर्शन गर्दैनन् ।

أَوْ كَالَّذِي مَرَّ عَلَىٰ قَرْيَةٍ وَهِيَ خَاوِيَةٌ عَلَىٰ عُرُوشِهَا قَالَ أَنَّىٰ يُحْيِي هَٰذِهِ اللَّهُ بَعْدَ مَوْتِهَا ۖ فَأَمَاتَهُ اللَّهُ مِائَةَ عَامٍ ثُمَّ بَعَثَهُ ۖ قَالَ كَمْ لَبِثْتَ ۖ قَالَ لَبِثْتُ يَوْمًا أَوْ بَعْضَ يَوْمٍ ۖ قَالَ بَل لَّبِثْتَ مِائَةَ عَامٍ فَانظُرْ إِلَىٰ طَعَامِكَ وَشَرَابِكَ لَمْ يَتَسَنَّهْ ۖ وَانظُرْ إِلَىٰ حِمَارِكَ وَلِنَجْعَلَكَ آيَةً لِّلنَّاسِ ۖ وَانظُرْ إِلَى الْعِظَامِ كَيْفَ نُنشِزُهَا ثُمَّ نَكْسُوهَا لَحْمًا ۚ فَلَمَّا تَبَيَّنَ لَهُ قَالَ أَعْلَمُ أَنَّ اللَّهَ عَلَىٰ كُلِّ شَيْءٍ قَدِيرٌ ﴿٢٥٩﴾

२६०.अथवा त्यस व्यक्तिको (कथा) जस्तो जुन व्यक्ति एउटा यस्तो नगरको छेउबाट प्रस्थान गर्दै थियो जुन आफ्नो छानो सहित भत्केर खसेको थियो, उसले सोध्यो, "यसको विनाशपश्चात् कहिले अल्लाहले यसको पुर्ननिर्माण गर्नेछन्?" तब अल्लाहले उसलाई एक सय वर्ष मृत राखे र त्यसको पुनरुत्थान गरे र भने: "तिमी (यस अवस्थामा) कति समयसम्म थियौ? उसले उत्तर दियो, "म एक दिन अथवा दिनको केहि अंशसम्म थिएँ ।" उनले भने: "होइन, (अपितु) तिमी (त्यस अवस्थामा) एकसय वर्षसम्म थियौ । अत: तिमी तिम्रो खाद्य र पेयपदार्थतर्फ हेर; तिनीहरू सडेका छैनन् । तथा आफ्नो गधातर्फ पनि दृष्टि गर । तथा तिमीलाई हामी मानिसहरूका निम्ति चिह्नस्वरूप बनाउँ भनी (हामीले यो कार्य गरेका हौं) । तथा तिमी हड्डीहरूतर्फ हेर कसरी हामी तिनीहरूलाई यथास्थानमा जोड्छौं तथा तिनीहरूमा मासु चढाउँछौं ।" अत: जब त्यो कुरा उसप्रति स्पष्ट खुल्यो तब उसले भन्यो, "अल्लाहले जे इच्छा गर्छन् ती सबै कार्य गर्ने शक्ति उनमा छ भनी म जान्दछु ।"

وَإِذْ قَالَ إِبْرَاهِيمُ رَبِّ أَرِنِي كَيْفَ تُحْيِي الْمَوْتَىٰ ۖ قَالَ أَوَلَمْ تُؤْمِن ۖ قَالَ بَلَىٰ وَلَٰكِن لِّيَطْمَئِنَّ قَلْبِي ۖ قَالَ فَخُذْ أَرْبَعَةً مِّنَ الطَّيْرِ فَصُرْهُنَّ إِلَيْكَ ثُمَّ

२६१.तथा (स्मरण गर) जब इब्राहिमले भनेका थिए, "हे मेरा प्रतिपालक तिमी कसरी मृत वस्तुलाई जीवनदान गर्छौ मलाई देखाउ । उनले भने "के तिमीले बिश्वास स्थापना गरिसकेका छैनौ र?" उनले भने, "किन नहुनु तर मेरो आत्माको शान्तिका निम्ति (मैले सोधेको हुँ) ।" उनले उत्तर दिए, "चारवटा पक्षी समात र

तिनीहरूलाई आफ्नो सान्निध्यमा रहने बानी बसाउ । तब तिनीहरूमध्ये हरेकलाई एउटा एउटा पहाडमा राख, त्यसपछि तिनीहरूलाई बोलाउ; तिनीहरू तिमीतर्फ तीव्रगतिले आउनेछन् । तथा अल्लाह परम क्षमताशील, तत्वज्ञ हुन भनी जान ।

اجْعَلْ عَلَىٰ كُلِّ جَبَلٍ مِّنْهُنَّ جُزْءًا ثُمَّ ادْعُهُنَّ يَأْتِينَكَ سَعْيًا ۚ وَاعْلَمْ أَنَّ اللَّهَ عَزِيزٌ حَكِيمٌ

२६२.जसले अल्लाहको मार्गमा आफ्नो धन-सम्पति खर्च गर्छन् ती व्यक्तिहरूको तुलना त्यस अन्नको दाना सदृश रहेको छ जसले सातवटा बालाहरू उत्पादन गर्छ, प्रत्येक बालामा सयवटा दाना हुन्छन् । तथा अल्लाहले जसका निम्ति इच्छा गर्छन् (त्यसलाई) अधिक बढाउँछन्; तथा अल्लाह अति समृद्ध, सर्वज्ञ छन् ।

مَثَلُ الَّذِينَ يُنفِقُونَ أَمْوَالَهُمْ فِي سَبِيلِ اللَّهِ كَمَثَلِ حَبَّةٍ أَنبَتَتْ سَبْعَ سَنَابِلَ فِي كُلِّ سُنبُلَةٍ مِّائَةُ حَبَّةٍ ۗ وَاللَّهُ يُضَاعِفُ لِمَن يَشَاءُ ۗ وَاللَّهُ وَاسِعٌ عَلِيمٌ

२६३.ती व्यक्तिहरू जसले अल्लाहको मार्गमा आफ्नो धन सम्पत्ति खर्च गर्छन् र खर्च गरेपश्चात् उपकार जताउने अथवा कष्ट दिने इच्छाले त्यसलाई स्मरण गराउँदैनन्, तिनीहरूको निम्ति तिनीहरूका पालन कर्ताकहाँ प्रतिदान छ, तथा तिनीहरूलाई न त कुनै प्रकारको भय हुनेछ न तिनीहरू शोकग्रस्त हुनेछन् ।

الَّذِينَ يُنفِقُونَ أَمْوَالَهُمْ فِي سَبِيلِ اللَّهِ ثُمَّ لَا يُتْبِعُونَ مَا أَنفَقُوا مَنًّا وَلَا أَذًى ۙ لَّهُمْ أَجْرُهُمْ عِندَ رَبِّهِمْ وَلَا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُونَ

२६४.निर्मल वचन र क्षमादान त्यो दानभन्दा उत्तम हुन्छ जसद्वारा अनिष्ट साधन प्रारम्भ हुन्छ । तथा अल्लाह निस्पृह (अभावहीन), सहनशील छन् ।

قَوْلٌ مَّعْرُوفٌ وَمَغْفِرَةٌ خَيْرٌ مِّن صَدَقَةٍ يَتْبَعُهَا أَذًى ۗ وَاللَّهُ غَنِيٌّ حَلِيمٌ

२६५.हे विश्वासीजन हो ! आफ्नो दान-पुण्यलाई उपकार जताई अथवा कसैलाई कष्ट दिई त्यस व्यक्तिलेझैं खेर नफाल, जसले केवल लोकाचारका निम्ति धन खर्च गर्छ तथा अल्लाह र अन्तिम दिनप्रति विश्वास राख्दैन । अतः उसको अवस्था त्यस ढुङ्गाको अवस्था-सदृश छ जुन माटो( ले ढाकिएको) हुन्छ । जसमाथि मुसलधार पानी पर्छ (तब) त्यसलाई नाङ्गो, चिल्लो तथा कठोर ढुंगा पारी छाड्छ । तिनीहरूले कमाएको कुनै अंश पनि तिनीहरूको हातमा पर्दैन तथा अल्लाहले अविश्वासी

يَا أَيُّهَا الَّذِينَ آمَنُوا لَا تُبْطِلُوا صَدَقَاتِكُم بِالْمَنِّ وَالْأَذَىٰ كَالَّذِي يُنفِقُ مَالَهُ رِئَاءَ النَّاسِ وَلَا يُؤْمِنُ بِاللَّهِ وَالْيَوْمِ الْآخِرِ ۖ فَمَثَلُهُ كَمَثَلِ صَفْوَانٍ عَلَيْهِ تُرَابٌ فَأَصَابَهُ وَابِلٌ فَتَرَكَهُ صَلْدًا ۖ لَّا يَقْدِرُونَ عَلَىٰ شَيْءٍ مِّمَّا كَسَبُوا ۗ وَاللَّهُ لَا يَهْدِي الْقَوْمَ الْكَافِرِينَ

व्यक्तिहरूलाई मार्ग देखाउँदैनन् ।

२६६.तथा ती व्यक्तिहरू जसले आफ्नो धन-सम्पति अल्लाहको प्रशन्नता प्राप्त गर्न र आफ्नो आत्मालाई दृढ तुल्याउनका निम्ति खर्च गर्छन्, तिनीहरूको अवस्था उच्च स्थानमा रहेको त्यस बगैंचासदृश छ जसमा मुसलधार पानी पर्छ ताकि उसले आफ्नो दोब्बर फल उत्पन्न गरोस् । तथा यदि त्यसमाथि ठूलो पानी नपरेमा साधारण पानी नै (त्यसका निम्ति पर्याप्त हुन्छ) । तथा तिमीहरूले जुन कार्य गर्छौ अल्लाहले त्यसलाई देखिरहेछन् ।

وَمَثَلُ الَّذِيْنَ يُنْفِقُوْنَ اَمْوَالَهُمُ ابْتِغَآءَ مَرْضَاتِ اللّٰهِ وَتَثْبِيْتًا مِّنْ اَنْفُسِهِمْ كَمَثَلِ جَنَّةٍۢ بِرَبْوَةٍ اَصَابَهَا وَابِلٌ فَاٰتَتْ اُكُلَهَا ضِعْفَيْنِ ۚ فَاِنْ لَّمْ يُصِبْهَا وَابِلٌ فَطَلٌّ ۗ وَاللّٰهُ بِمَا تَعْمَلُوْنَ بَصِيْرٌ ﴿٢٦٥﴾

२६७.के तिमीहरूमध्ये कुनै व्यक्ति उसको यस्तो खजूर र अङ्गुरको बगैंचा होस् भन्ने इच्छा गर्छ जसमनि नहरहरू बगिरहेका हुन्, त्यसमा उसका निम्ति सबै प्रकारका फलहरू प्राप्त हुन् तथा उसलाई वृद्धेसकालले (पनि) घेरोस् र उसका दुर्बल सन्तान हुन् तथा त्यसमा यस्तो अग्निमय हुरी चलोस् जसले गर्दा त्यो जलेर भष्म हुन पुगोस्? अत: अल्लाह तिमीहरूका निम्ति आफ्ना निर्देशन-हरू स्पष्टरूपमा वर्णन गर्छन्– ताकि तिमीहरू चिन्तन मनन गर्न सक ।

اَيَوَدُّ اَحَدُكُمْ اَنْ تَكُوْنَ لَهٗ جَنَّةٌ مِّنْ نَّخِيْلٍ وَّاَعْنَابٍ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ ۙ لَهٗ فِيْهَا مِنْ كُلِّ الثَّمَرٰتِ ۙ وَاَصَابَهُ الْكِبَرُ وَلَهٗ ذُرِّيَّةٌ ضُعَفَآءُ ۚ فَاَصَابَهَآ اِعْصَارٌ فِيْهِ نَارٌ فَاحْتَرَقَتْ ۗ كَذٰلِكَ يُبَيِّنُ اللّٰهُ لَكُمُ الْاٰيٰتِ لَعَلَّكُمْ تَتَفَكَّرُوْنَ ﴿٢٦٦﴾ ع

२६८.हे विश्वासीजन हो ! आफ्नो आर्जनमध्ये पवित्र वस्तुहरू र हामीले तिमीहरूका निम्ति पृथ्वीबाट उत्पन्न गरेका वस्तुहरूमध्ये व्यय गर, तथा यस्तो अपवित्र वस्तु दान-पुण्यका निम्ति नछान जुन वस्तु शर्मले नेत्र झुकाएर (लिनु)बाहेक तिमीहरू आफैले ग्रहण गर्दैनौ । तथा अल्लाह निष्पृह, (अभावहीन) अति प्रशंसनीय छन् भनी जान ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْٓا اَنْفِقُوْا مِنْ طَيِّبٰتِ مَا كَسَبْتُمْ وَمِمَّآ اَخْرَجْنَا لَكُمْ مِّنَ الْاَرْضِ ۗ وَلَا تَيَمَّمُوا الْخَبِيْثَ مِنْهُ تُنْفِقُوْنَ وَلَسْتُمْ بِاٰخِذِيْهِ اِلَّآ اَنْ تُغْمِضُوْا فِيْهِ ۗ وَاعْلَمُوْٓا اَنَّ اللّٰهَ غَنِيٌّ حَمِيْدٌ ﴿٢٦٧﴾

२६९.सैतानले तिमीहरूलाई दरिद्रताको त्रास देखाउँछ र तिमीहरूलाई निर्लज्जताको आदेश दिन्छ, तथा अल्लाह आफ्नो जुनाफबाट तिमीहरूका तिम्ति एउटा परम क्षमा र परम कृपाको वचन

اَلشَّيْطٰنُ يَعِدُكُمُ الْفَقْرَ وَيَاْمُرُكُمْ بِالْفَحْشَآءِ ۚ وَاللّٰهُ يَعِدُكُمْ مَّغْفِرَةً مِّنْهُ وَفَضْلًا ۗ وَاللّٰهُ وَاسِعٌ عَلِيْمٌ ﴿٢٦٨﴾

दिन्छन् । तथा अल्लाह अतिदानशील, सर्वज्ञ छन् ।

يُؤْتِي الْحِكْمَةَ مَنْ يَشَاءُ ۚ وَمَنْ يُؤْتَ الْحِكْمَةَ فَقَدْ أُوتِيَ خَيْرًا كَثِيرًا ۗ وَمَا يَذَّكَّرُ إِلَّا أُولُو الْأَلْبَابِ ﴿٢٦٩﴾

२७०.उनी जसलाई इच्छा गर्छन् उसलाई तत्त्वज्ञान प्रदान गर्छन्, तथा जसलाई तत्त्वज्ञान प्रदान गरियो निश्चय नै उसलाई प्रर्याप्त कल्याणकारी वस्तु प्राप्त भयो । तथा बुद्धिमान व्यक्तिहरूबाहेक अन्य कसैले उपदेश पनि ग्रहण गर्दैन ।

وَمَا أَنْفَقْتُمْ مِنْ نَفَقَةٍ أَوْ نَذَرْتُمْ مِنْ نَذْرٍ فَإِنَّ اللَّهَ يَعْلَمُهُ ۗ وَمَا لِلظَّالِمِينَ مِنْ أَنْصَارٍ ﴿٢٧٠﴾

२७१.चाहे जे सुकै तिमीहरू खर्च गर अथवा जुन सुकै भाकल गर, निश्चय नै अल्लाहले त्यसलाई जान्दछन्; तथा अत्याचारीहरूको कुनै सहयोगी हुनेछैन ।

إِنْ تُبْدُوا الصَّدَقَاتِ فَنِعِمَّا هِيَ ۖ وَإِنْ تُخْفُوهَا وَتُؤْتُوهَا الْفُقَرَاءَ فَهُوَ خَيْرٌ لَكُمْ ۚ وَيُكَفِّرُ عَنْكُمْ مِنْ سَيِّئَاتِكُمْ ۗ وَاللَّهُ بِمَا تَعْمَلُونَ خَبِيرٌ ﴿٢٧١﴾

२७२.यदि तिमीहरूले प्रकाश्यरूपमा दान गरेमा, त्यो उत्तम (र भलो) हुनेछ; परन्तु यदि तिमीहरूले तिनलाई गोप्य राखी दरिद्रहरूलाई प्रदान गरेमा, त्यो तिमीहरूका निम्ति अझै राम्रो हुनेछ; तथा उनले तिमीहरूका (धेरै) पापहरू मोक्ष गर्नेछन् । तथा तिमीहरूले जुन कार्य गर्दछौ त्यसप्रति अल्लाह भिज्ञ छन् ।

لَيْسَ عَلَيْكَ هُدَاهُمْ وَلَٰكِنَّ اللَّهَ يَهْدِي مَنْ يَشَاءُ ۗ وَمَا تُنْفِقُوا مِنْ خَيْرٍ فَلِأَنْفُسِكُمْ ۚ وَمَا تُنْفِقُونَ إِلَّا ابْتِغَاءَ وَجْهِ اللَّهِ ۚ وَمَا تُنْفِقُوا مِنْ خَيْرٍ يُوَفَّ إِلَيْكُمْ وَأَنْتُمْ لَا تُظْلَمُونَ ﴿٢٧٢﴾

२७३.तिनीहरूलाई सन्मार्गगामी तुल्याउनु तिम्रो जिम्मेवारी होइन; परन्तु अल्लाहले त्यसलाई सन्मार्ग देखाउँछन् जसलाई उनले इच्छा गर्छन् । तथा जे-जति धन तिमीहरू खर्च गर त्यसको लाभ पनि तिमीहरूको आफ्नै ज्यानलाई हुनेछ– ताकि तिमीहरू यस्तो खर्च केवल अल्लाहको अनुग्रह प्राप्तिका निम्ति गर्ने गर्छौ । तथा जुनसुकै धन तिमीहरू खर्च गर्छौ त्यो तिमीहरूलाई पूर्णरूपमा फर्काइनेछ तथा तिमीहरूप्रति अन्याय गरिनेछैन ।

لِلْفُقَرَاءِ الَّذِينَ أُحْصِرُوا فِي سَبِيلِ اللَّهِ لَا يَسْتَطِيعُونَ ضَرْبًا فِي الْأَرْضِ يَحْسَبُهُمُ الْجَاهِلُ أَغْنِيَاءَ مِنَ التَّعَفُّفِ تَعْرِفُهُمْ بِسِيمَاهُمْ لَا

२७४.(यी दानहरू) ती दरिद्रहरूका निम्ति हुन् जसलाई अल्लाहका मार्गबाट रोकिएको छ, तथा तिनीहरू देशमा भ्रमण गर्न असमर्थ छन् । अनभिज्ञ व्यक्तिले तिनीहरूलाई (भिक्षावृत्ति अवलम्बन

يَسْـَٔلُونَ النَّاسَ إِلْحَافًا ۗ وَمَا تُنفِقُوا مِنْ خَيْرٍ فَإِنَّ اللَّهَ بِهِ عَلِيمٌ ﴿٢٧٣﴾

नगरेका कारण) अभावहीन भनी ठान्छ । तिमीहरूले तिनीहरूको अनुहार हेरेर तिनलाई चिन्नेछौं; तिनीहरू अनुनय-विनयका साथ मानिसहरू-संग भिक्षा माग्दैनन् । तथा जुनसुकै धन तिमीहरू व्यय गर अल्लाहले निश्चय नै त्यसलाई राम्ररी जान्दछन् ।

الَّذِينَ يُنفِقُونَ أَمْوَالَهُم بِاللَّيْلِ وَالنَّهَارِ سِرًّا وَعَلَانِيَةً فَلَهُمْ أَجْرُهُمْ عِندَ رَبِّهِمْ وَلَا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُونَ ﴿٢٧٤﴾

२७५.जुन व्यक्तिहरू आफ्नो सम्पत्ति रात-दिन गोपनीय तथा प्रकाश्यरूपमा व्यय गर्छन्, तिनीहरूको प्रतिदान तिनीहरूका प्रतिपालककहाँ रहेको छ; तिनीहरूलाई न त भय हुनेछ, न तिनीहरू चिन्ताग्रस्त हुनेछन् ।

الَّذِينَ يَأْكُلُونَ الرِّبَا لَا يَقُومُونَ إِلَّا كَمَا يَقُومُ الَّذِي يَتَخَبَّطُهُ الشَّيْطَانُ مِنَ الْمَسِّ ۚ ذَٰلِكَ بِأَنَّهُمْ قَالُوا إِنَّمَا الْبَيْعُ مِثْلُ الرِّبَا ۗ وَأَحَلَّ اللَّهُ الْبَيْعَ وَحَرَّمَ الرِّبَا ۚ فَمَن جَاءَهُ مَوْعِظَةٌ مِّن رَّبِّهِ فَانتَهَىٰ فَلَهُ مَا سَلَفَ وَأَمْرُهُ إِلَى اللَّهِ ۖ وَمَنْ عَادَ فَأُولَٰئِكَ أَصْحَابُ النَّارِ ۖ هُمْ فِيهَا خَالِدُونَ ﴿٢٧٥﴾

२७६.जुन व्यक्तिहरू ब्याज खाने गर्छन् ती व्यक्तिहरू त्यसरी नै उभिन्छन् जसरी सैतानले आक्रमण गरेर होस उडाएको व्यक्ति उभिन्छ । यसको कारण के हो भने तिनीहरू भन्छन्: "व्यापार (पनि त) ब्याज जस्तै हो; परन्तु अल्लाहले व्यापारलाई वैध र ब्याजलाई अवैध बनाएका छन् । अत: त्यो व्यक्ति जसले आफ्ना प्रतिपालकका तर्फबाट कुनै उपदेश प्राप्त भएपश्चात् उक्त कार्य त्याग्छ, तब (उसंले) अतीतमा (प्राप्त गरेको वस्तु) उसकै हुनेछ; तथा उसको मामिला अल्लाहको जिम्मा हुनेछ । तथा ती व्यक्तिहरू जसले (उक्त कार्य) दोहऱ्याउछन्, तिनीहरू नै अग्निवासी हुन्; त्यहाँ तिनीहरू बसोबास गर्नेछन् ।

يَمْحَقُ اللَّهُ الرِّبَا وَيُرْبِي الصَّدَقَاتِ ۗ وَاللَّهُ لَا يُحِبُّ كُلَّ كَفَّارٍ أَثِيمٍ ﴿٢٧٦﴾

२७७.अल्लाहले ब्याजलाई समाप्त गर्नेछन् तथा दान-पुण्यलाई बढाउनेछन् । तथा अल्लाहले त्यसलाई जो घोर अविश्वासी तथा घोर पापी रहेको छ मन पराउँदैनन्*

* टिप्पणी : उपरोक्त आयतले ब्याजमा आधारित अर्थ व्यवस्थाको तथा बढाएर ब्याज लिने (कार्य) को अनिवार्यरूपमा सर्वनाश हुन्छ यस विपरित दान पुण्यप्रति जोड दिने (प्रकारको) अर्थ व्यवस्था भने मौलाउनेछ भन्ने कुराको स्पष्ट निर्णय दिन्छ ।

إِنَّ الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ وَأَقَامُوا الصَّلَاةَ وَآتَوُا الزَّكَاةَ لَهُمْ أَجْرُهُمْ عِندَ رَبِّهِمْ ۚ وَلَا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُونَ ﴿٢٧٧﴾

२७८.निश्चय नै ती व्यक्तिहरू, जसले विश्वास स्थापना गर्छन्, तथा पुण्यकार्य गर्छन्, तथा नमाजको अनुष्ठान गर्ने गर्छन् तथा जगात दिन्छन् तिनीहरूका निम्ति तिनीहरूको पारितोषिक आफ्ना प्रतिपालककहाँ रहेको छ, तथा तिनीहरूप्रति कुनै भय हुनेछैन र तिनीहरू चिन्ताग्रस्त हुनेछैनन् ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا اتَّقُوا اللَّهَ وَذَرُوا مَا بَقِيَ مِنَ الرِّبَا إِن كُنتُم مُّؤْمِنِينَ ﴿٢٧٨﴾

२७९.हे विश्वासीजन हो ! अल्लाहको डर धारण गर तथा यदि तिमीहरू विश्वासी हौ भने शेष रहेको ब्याज परित्याग गर ।

فَإِن لَّمْ تَفْعَلُوا فَأْذَنُوا بِحَرْبٍ مِّنَ اللَّهِ وَرَسُولِهِ ۖ وَإِن تُبْتُمْ فَلَكُمْ رُءُوسُ أَمْوَالِكُمْ لَا تَظْلِمُونَ وَلَا تُظْلَمُونَ ﴿٢٧٩﴾

२८०.परन्तु यदि तिमीहरूले त्यसो गरेनौ भने अल्लाह तथा उनका सन्देशवाहकका तर्फबाट हुने युद्धप्रति सतर्क होऊ; तथा यदि तिमीहरूले प्रायश्चित गर्‍यौ भने, तिमीहरूले आफ्नो मूलधन प्राप्त गर्नेछौ । -यस प्रकार) न त तिमीहरूले अन्याय गर्नेछौ, न ता तिमीहरूप्रति अन्याय हुनेछ ।

وَإِن كَانَ ذُو عُسْرَةٍ فَنَظِرَةٌ إِلَىٰ مَيْسَرَةٍ ۚ وَأَن تَصَدَّقُوا خَيْرٌ لَّكُمْ ۖ إِن كُنتُمْ تَعْلَمُونَ ﴿٢٨٠﴾

२८१.तथा यदि कुनै (ऋणी) अभावग्रस्त अवस्थामा पुगेमा त्यसलाई सुविस्ताजनक अवस्थासम्मका लागि अवसर दिनु पर्नेछ । तथा यदि तिमीहरू जान्दछौ भने दानस्वरूप त्यसलाई क्षमा गर्नमा नै तिमीहरूका निम्ति भलो हुनेछ ।

وَاتَّقُوا يَوْمًا تُرْجَعُونَ فِيهِ إِلَى اللَّهِ ۖ ثُمَّ تُوَفَّىٰ كُلُّ نَفْسٍ مَّا كَسَبَتْ وَهُمْ لَا يُظْلَمُونَ ﴿٢٨١﴾

२८२.तथा त्यस दिनप्रति डराऊ जुनदिन तिमीहरूलाई अल्लाहतर्फ फर्काएर लगिनेछ; अनि प्रत्येक आत्मालाई पूर्णरूपमा उसको कमाई प्रदान गरिनेछ; तथा तिनीहरूप्रति अन्याय गरिनेछैन ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا إِذَا تَدَايَنتُم بِدَيْنٍ إِلَىٰ أَجَلٍ مُّسَمًّى فَاكْتُبُوهُ ۚ وَلْيَكْتُب بَّيْنَكُمْ كَاتِبٌ بِالْعَدْلِ ۚ

२८३.हे विश्वासीजन हो ! जब तिमीहरू कुनै निर्धारित म्यादका निम्ति एकले अर्काबाट ऋण लिन्छौ तब त्यसलाई लेख्ने गर । तथा कुनै लेखनदासले तिमीहरू समक्ष (त्यसलाई) न्यायपूर्वक लेखिदेओस् । तथा कुनै लेखनदासले लेख्न अस्वीकार नगरोस्, किनभने अल्लाहले उसलाई

وَلَا يَأْبَ كَاتِبٌ أَنْ يَكْتُبَ كَمَا عَلَّمَهُ اللَّهُ فَلْيَكْتُبْ ۚ وَلْيُمْلِلِ الَّذِي عَلَيْهِ الْحَقُّ وَلْيَتَّقِ اللَّهَ رَبَّهُ وَلَا يَبْخَسْ مِنْهُ شَيْئًا ۚ فَإِنْ كَانَ الَّذِي عَلَيْهِ الْحَقُّ سَفِيهًا أَوْ ضَعِيفًا أَوْ لَا يَسْتَطِيعُ أَنْ يُمِلَّ هُوَ فَلْيُمْلِلْ وَلِيُّهُ بِالْعَدْلِ ۚ وَاسْتَشْهِدُوا شَهِيدَيْنِ مِنْ رِجَالِكُمْ ۖ فَإِنْ لَمْ يَكُونَا رَجُلَيْنِ فَرَجُلٌ وَامْرَأَتَانِ مِمَّنْ تَرْضَوْنَ مِنَ الشُّهَدَاءِ أَنْ تَضِلَّ إِحْدَاهُمَا فَتُذَكِّرَ إِحْدَاهُمَا الْأُخْرَىٰ ۚ وَلَا يَأْبَ الشُّهَدَاءُ إِذَا مَا دُعُوا ۚ وَلَا تَسْأَمُوا أَنْ تَكْتُبُوهُ صَغِيرًا أَوْ كَبِيرًا إِلَىٰ أَجَلِهِ ۚ ذَٰلِكُمْ أَقْسَطُ عِنْدَ اللَّهِ وَأَقْوَمُ لِلشَّهَادَةِ وَأَدْنَىٰ أَلَّا تَرْتَابُوا ۖ إِلَّا أَنْ تَكُونَ تِجَارَةً حَاضِرَةً تُدِيرُونَهَا بَيْنَكُمْ فَلَيْسَ عَلَيْكُمْ جُنَاحٌ أَلَّا تَكْتُبُوهَا ۗ وَأَشْهِدُوا إِذَا تَبَايَعْتُمْ ۚ وَلَا يُضَارَّ كَاتِبٌ وَلَا شَهِيدٌ ۚ وَإِنْ تَفْعَلُوا فَإِنَّهُ فُسُوقٌ بِكُمْ ۗ وَاتَّقُوا اللَّهَ ۖ وَيُعَلِّمُكُمُ اللَّهُ ۗ وَاللَّهُ بِكُلِّ شَيْءٍ عَلِيمٌ ﴿٢٨٢﴾

सिकाएका हुन् । अत: त्यसले लेखोस् तथा जसको जिम्मेवारी छ त्यस व्यक्तिले लेखाओस् तथा उसले आफ्ना पालनहार अल्लाहको, डरलाई दृष्टिगत गरोस् र त्यसबाट केही नघटाओस् । तथा यदि त्यो जिम्मेवार व्यक्ति अबुझ अथवा दुर्बल रहेमा अथवा स्वयम् लेखाउने सामर्थ्य राख्दैन भने उसको कुनै अभिभावकले न्यायपूर्वक लेखाओस् । तथा तिमीहरूले आफ्ना पुरुषहरूमध्ये दुईजनालाई साक्षीस्वरूप निर्धारित गर्ने गर । परन्तु यदि दुईजना पुरुष (उपलब्ध) नभएमा साक्षीहरूमध्ये तिमीहरूको इच्छानुसार एकजना पुरुष र दुईजना महिलालाई साक्षीस्वरूप नियोग गर्ने गर; कारण ती दुई (महिलाहरू)मध्ये कुनै एकले बिर्सिएका खण्डमा एकले अर्कालाई स्मरण गराउन सकून् । तथा जब साक्षीहरूलाई बोलाइन्छ तब तिनीहरूले अस्वीकार नगरुन् । तथा सानो होस अथवा ठूलो होस तिमीहरूले त्यसलाई त्यसको निर्धारित (तिर्ने) म्याद समेत लेख्न सुस्ती नगर । यो कुरो अल्लाहका दृष्टिमा अधिक न्यायसंगत, तथा साक्षीलाई अधिक दृढ राख्ने र तिमीहरूलाई आशङ्का-हरूबाट बचाउनमा अधिक उपयोगी छ । (त्यसकारण लेख्न नबिर्स) सिवाय त्यो हाताहाती हुने व्यापार जसलाई तिमीहरूले परस्पर (नगद) लेनदेन गरी गर्छौ । त्यस्तो खण्डमा त्यसलाई नलेख्नाले तिमीहरूप्रति कुनै पाप लाग्नेछैन । तथा जब तिमीहरू परस्पर किनबेच गर्छौ तब साक्षी राख्ने गर । तथा न त लेखनदासलाई कष्ट दिइयोस् न साक्षीलाई । तथा यदि तिमीहरूले (त्यसो) गर्‍यौ भने यो निश्चयपूर्वक तिमीहरूका तर्फबाट अवज्ञास्वरूप हुनेछ । तथा अल्लाहको डर धारण गर, अल्लाहले तिमीहरूलाई ज्ञान प्रदान गर्नेछन् तथा अल्लाह प्रत्येक वस्तुलाई राम्ररी जान्दछन् ।

وَإِنْ كُنْتُمْ عَلَىٰ سَفَرٍ وَّلَمْ تَجِدُوْا كَاتِبًا فَرِهٰنٌ مَّقْبُوْضَةٌ ۚ فَإِنْ أَمِنَ بَعْضُكُمْ بَعْضًا فَلْيُؤَدِّ الَّذِى اؤْتُمِنَ أَمَانَتَهُ وَلْيَتَّقِ اللّٰهَ رَبَّهُ ۚ وَلَا تَكْتُمُوا الشَّهَادَةَ ۚ وَمَنْ يَّكْتُمْهَا فَإِنَّهُ اٰثِمٌ قَلْبُهُ ۚ وَاللّٰهُ بِمَا تَعْمَلُوْنَ عَلِيْمٌ ﴿٢٨٣﴾

२८४.तथा यदि तिमीहरू यात्रामा रहेमा, र तिमीहरूलाई कुनै लेखनदास प्राप्त नभएमा, धरोहर कब्जामा राख्नु उचित हुनेछ । तथा यदि तिमीहरूमध्ये कसैले अन्य कसैलाई कुनै वस्तुका निम्ति अमिन मानेमा त्यो व्यक्ति जसलाई अमिन (विश्वसनीय) मानिएको छ उक्त धरोहर फर्काओस् तथा उसले आफ्ना पालनहार अल्लाहको डर धारण गरोस् । तथा तिमीहरू गवाहीलाई लुकाउने नगर; तथा जसले त्यसलाई लुकाउँछ निश्चय नै, त्यसको हृदय पापी हुन्छ, तथा तिमीहरू जुन कार्य गर्दछौ अल्लाहले त्यसलाई राम्ररी जान्दछन् ।

لِلّٰهِ مَا فِى السَّمٰوٰتِ وَمَا فِى الْأَرْضِ ۗ وَإِنْ تُبْدُوْا مَا فِىٓ أَنْفُسِكُمْ أَوْ تُخْفُوْهُ يُحَاسِبْكُمْ بِهِ اللّٰهُ ۗ فَيَغْفِرُ لِمَنْ يَّشَآءُ وَيُعَذِّبُ مَنْ يَّشَآءُ ۗ وَاللّٰهُ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ﴿٢٨٤﴾

२८५.आकाशमण्डलमा रहेका तथा पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरू अल्लाहकै हुन् । तथा जुन कुरा तिमीहरूको मनमा छ त्यसलाई तिमीहरू गुप्त राख अथवा प्रकट गर, अल्लाहले तिमीहरूसँग त्यसको हिसाब लिनेछन् । ततपश्चात् उनले जसलाई इच्छा गर्छन् क्षमा गरी दिन्छन् तथा जसलाई इच्छा गर्छन् दण्ड दिन्छन्; तथा अल्लाहमा ती सबै कार्य गर्ने सामर्थ्य छ जसको उनले इच्छा गर्छन् ।

اٰمَنَ الرَّسُوْلُ بِمَآ أُنْزِلَ إِلَيْهِ مِنْ رَّبِّهٖ وَالْمُؤْمِنُوْنَ ۚ كُلٌّ اٰمَنَ بِاللّٰهِ وَمَلٰٓئِكَتِهٖ وَكُتُبِهٖ وَرُسُلِهٖ ۟ لَا نُفَرِّقُ بَيْنَ أَحَدٍ مِّنْ رُّسُلِهٖ ۟ وَقَالُوْا سَمِعْنَا وَأَطَعْنَا ۫ غُفْرَانَكَ رَبَّنَا وَإِلَيْكَ الْمَصِيْرُ ﴿٢٨٥﴾

२८६.(हाम्रा) यी सन्देशवाहकले त्यस कुराप्रति विश्वास राख्छन् जुनकुरो उनका प्रतिपालकका तर्फबाट उनीप्रति अवतीर्ण गरिएको छ, तथा (यसै प्रकार) विश्वासीहरूले पनि । (तिनीहरू) सबैले अल्लाहप्रति, तथा उनका फरिस्ताहरूप्रति, तथा उनका धर्मग्रन्थहरूप्रति तथा उनका सन्देशवाहकहरूप्रति (के भन्दै) विश्वास राख्छन् (भने): "हामी उनका सन्देशवाहकहरूबीच कुनै प्रकारको भेदभाव राख्दैनौं:" तथा तिनीहरू भन्छन्, "हामी सुन्छौं र हामी आज्ञापालन गर्छौं । हे हाम्रा प्रतिपालक, (हामी) तिमीसित क्षमा(याचना गर्दछौं), तथा तिमीतर्फ नै -

हामीले) फर्कनु छ ।

२८७.अल्लाहले कुनै ज्यानमाथि उसको सामर्थभन्दा अधिक बोझ लाँद्दैछन् । उसले कमाएको -पुरस्कार) उसैलाई प्राप्त हुनेछ, तथा उसको दुष्कर्मको (दण्ड) पनि उसैले पाउनेछ । हे हाम्रा प्रतिपालक ! हामीले बिर्सेमा वा गल्ती गरेमा दण्ड नदेउ । तथा हे हाम्रा प्रतिपालक ! हामीमाथि त्यस्तो जिम्मेवारी नसुम्प जस्तो जिम्मेवारी तिमीले हामीभन्दा अधिका व्यक्तिहरूमाथि सुम्पेका थियौ* । हे हाम्रा प्रतिपालक ! हामीमाथि त्यो बोझ नहाल जसलाई उठाउने शक्ति हामीमा छैन; तथा हाम्रो
(पाप)मोचन गर र हामीलाई क्षमादान गर तथा हामीमाथि करुणा गर; तिमी हाम्रा स्वामी हौ; अत: अविश्वासीव्यक्तिहरू विरुद्ध तिमी हामीलाई सहायता प्रदान गर

لَا يُكَلِّفُ اللّٰهُ نَفْسًا اِلَّا وُسْعَهَا ۚ لَهَا مَا كَسَبَتْ وَ عَلَيْهَا مَا اكْتَسَبَتْ ۚ رَبَّنَا لَا تُؤَاخِذْنَآ اِنْ نَّسِيْنَآ اَوْ اَخْطَاْنَا ۚ رَبَّنَا وَلَا تَحْمِلْ عَلَيْنَآ اِصْرًا كَمَا حَمَلْتَهٗ عَلَى الَّذِيْنَ مِنْ قَبْلِنَا ۚ رَبَّنَا وَلَا تُحَمِّلْنَا مَا لَا طَاقَةَ لَنَا بِهٖ ۚ وَاعْفُ عَنَّا ۗ وَاغْفِرْ لَنَا ۗ وَارْحَمْنَا ۗ اَنْتَ مَوْلٰىنَا فَانْصُرْنَا عَلَى الْقَوْمِ الْكٰفِرِيْنَ ﴿٢٨٦﴾

---

* यसले ती अतीतका जातिहरूतर्फ सङ्केत गर्छ जसलाई धार्मिक जिम्मेवारीहरू सुम्पिइएको थियो परन्तु तिनीहरूले अनादर गरे र ती (जिम्मेवारी) हरूलाई बोझ ठाने । जस्तै समाजका निम्न वर्गका व्यवसायिक धर्मोपदेशकहरूका काँधमा त्यो बोझ हालियो तथा एउटा यस्तो धार्मिक पादरी (पना) को सिर्जना हुन गयो जसले धर्मको ज्ञानमाथि एकाधिकार जमायो जबकि तिनीहरू वस्तुत: त्यसको पूर्ण न्याय गर्ने योग्य थिएनन् । त्यस प्रक्रियाले अन्तमा सृष्टिलाई एउटा यस्तो धार्मिक पादरी(पना) तर्फ डोऱ्यायो जुनचाहिँ सङ्कीर्णमनस्क, दाम्भिक र असहिष्णु थियो तथा तिनीहरूमध्ये अति कमैले मात्र अल्लाहको वाणीको महत्व र दर्शनलाई बुझ्दथे । त्यस्तो धार्मिक नेतृत्व ६२:६ (अल्-जुमुआ:) मा (उल्लेखित) गधाहरूसदृश रहेको छ जसका पिठ्यूँमा धार्मिक पुस्तकहरू स्थानान्तरणका निम्ति लादिन्छन् परन्तु तिनीहरूले के उठाएका छन् भन्ने कुरा ती गधाहरूलाई ज्ञानै हुँदैन । अत: 'इस्रन्' ( اِصْرًا ) शब्दको अर्थ के बन्न जान्छ भने अल्लाहद्वारा सुम्पिएको कुनै पनि जिम्मेवारी त्यस्तो बोझ हुँदैन जसबाट साँच्चा विश्वासीजन भाग्ने प्रयास गरुन् ।

سُوْرَةُ اٰلِ عِمْرَانَ مَدَنِيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ مِائَتَا اٰيَةٍ وَّاٰيَةٌ وَّعِشْرُوْنَ رُكُوْعًا

## आले-'इमरान्
(हिजरतपछि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु अल्लाहको नाममा ।

الٓمّٓ ②

२. अलिफ लाम मिम* ।

اللّٰهُ لَآ اِلٰهَ اِلَّا هُوَ الْحَيُّ الْقَيُّوْمُ ③

३. अल्लाह तिनै हुन् जसबाहेक कोही उपास्य छैन । उनी अनन्त जीवनका स्वामी, स्वाधारित, सबैका आधार हुन् ।

نَزَّلَ عَلَيْكَ الْكِتٰبَ بِالْحَقِّ مُصَدِّقًا لِّمَا بَيْنَ يَدَيْهِ وَاَنْزَلَ التَّوْرٰىةَ وَالْاِنْجِيْلَ ④

४. उन उनले तिमीप्रति यो सत्यमा आधारित (र) पहिलाको ज्ञान(लाई) प्रमाणित गर्ने किताब अवतीर्ण गरेका छन् । उनले मानिसहरूका निम्ति उनीहरूको मार्गदर्शनस्वरूप (यसअघि) तौरात र इन्जिल (धर्मोपदेश) अवतीर्ण गरेका थिए र उनले भेद** (ग्रन्थ) अवतीर्ण गरेका छन् ।

مِنْ قَبْلُ هُدًى لِّلنَّاسِ وَاَنْزَلَ الْفُرْقَانَ ۬ اِنَّ الَّذِيْنَ كَفَرُوْا بِاٰيٰتِ اللّٰهِ لَهُمْ عَذَابٌ شَدِيْدٌ ۭ وَاللّٰهُ عَزِيْزٌ ذُو انْتِقَامٍ ⑤

५. निश्चय नै, ती व्यक्तिहरू जसले अल्लाहका चिह्नहरूलाई अस्वीकार गर्छन्, तिनीहरूले कठोर दण्ड पाउनेछन् । अल्लाह परम पराक्रमी, दण्ड दिने शक्तियुक्त छन् ।

اِنَّ اللّٰهَ لَا يَخْفٰى عَلَيْهِ شَيْءٌ فِي الْاَرْضِ وَلَا فِي السَّمَاۗءِ ⑥

६. निश्चय नै, पृथ्वी तथा आकाशमा रहेको कुनै वस्तु पनि अल्लाहबाट गुप्त रहन सक्दैन ।

---

* म अल्लाह सर्वज्ञ हुँ ।

** 'अल्-फुरकान' को अर्थ अखण्डनीय सत्य हो साथै कुनै यस्तो वस्तु पनि जसले एउटा वस्तुलाई अर्को वस्तुबाट पूर्णरूपले पृथक गर्छ, यसै प्रकार यसले सिद्धान्तको कार्य गर्छ ।

هُوَ الَّذِيْ يُصَوِّرُكُمْ فِي الْأَرْحَامِ كَيْفَ يَشَآءُ ۚ لَآ إِلٰهَ إِلَّا هُوَ الْعَزِيْزُ الْحَكِيْمُ ۝

७. उनै हुन् जसले गर्भाशयमा तिमीहरूलाई आफ्नो इच्छानुसार आकृति प्रदान गर्छन् । उनीबाहेक अन्य कुनै उपास्य छैन, उनी नै परम पराक्रमी तत्वज्ञ हुन् ।

هُوَ الَّذِيْٓ أَنْزَلَ عَلَيْكَ الْكِتٰبَ مِنْهُ اٰيٰتٌ مُّحْكَمٰتٌ هُنَّ أُمُّ الْكِتٰبِ وَأُخَرُ مُتَشٰبِهٰتٌ ۖ فَأَمَّا الَّذِيْنَ فِيْ قُلُوْبِهِمْ زَيْغٌ فَيَتَّبِعُوْنَ مَا تَشٰبَهَ مِنْهُ ابْتِغَآءَ الْفِتْنَةِ وَابْتِغَآءَ تَأْوِيْلِهٖ ۚ وَمَا يَعْلَمُ تَأْوِيْلَهٗٓ إِلَّا اللّٰهُ ۘ وَالرّٰسِخُوْنَ فِي الْعِلْمِ يَقُوْلُوْنَ اٰمَنَّا بِهٖ ۙ كُلٌّ مِّنْ عِنْدِ رَبِّنَا ۚ وَمَا يَذَّكَّرُ إِلَّآ أُولُوا الْأَلْبَابِ ۝

८. ती उनै हुन्, जसले तिमीप्रति यो किताब अवतीर्ण गरे, यसका केही पदहरू (आयातहरू) निर्णायक अर्थका छन्, जुन यस किताबका (मूल) आधार हुन् तथा अन्य केही यस्ता (पदहरू पनि) छन् जुन विभिन्न भावार्थबाट प्रभावित हुन्छन् । अतः जुन व्यक्तिहरूको हृदय विकृत छ तिनीहरू अशान्ति उत्पन्न गर्न र त्यसको (गलत) व्याख्या गर्नका निम्ति त्यस्ता विभिन्न भावार्थबाट प्रभावित हुने -पदहरू) कापछि लाग्छन् । तथा अल्लाह तथा पूर्णज्ञान प्राप्त व्यक्तिहरूबाहेक अन्य कसैले त्यसको (वास्तविक) व्याख्या जान्दैन । तिनीहरू भन्छन् – "हामी यसप्रति विश्वास गर्छौं । यो सम्पूर्ण हाम्रा प्रतिपालकका तर्फबाट हो । तथा बुद्धिमानहरूबाहेक कसैले उपदेश ग्रहण गर्दैन ।

رَبَّنَا لَا تُزِغْ قُلُوْبَنَا بَعْدَ إِذْ هَدَيْتَنَا وَهَبْ لَنَا مِنْ لَّدُنْكَ رَحْمَةً ۚ إِنَّكَ أَنْتَ الْوَهَّابُ ۝

९. "हे (हाम्रा) प्रतिपालक ! हामीलाई तिमीले सन्मार्ग प्रदान गरेपश्चात् हाम्रो हृदयलाई टेढो हुन नदेउ तथा हामीलाई आफ्नोजुनाफबाट कृपा प्रदान गर। वास्तवमा तिमी नै केवल श्रेष्ठ दानशील हौ ।"

رَبَّنَآ إِنَّكَ جَامِعُ النَّاسِ لِيَوْمٍ لَّا رَيْبَ فِيْهِ ۚ إِنَّ اللّٰهَ لَا يُخْلِفُ الْمِيْعَادَ ۝

१०. "हे (हाम्रा) प्रतिपालक ! तिमीले निश्चय नै सम्पूर्ण मानिसहरूलाई त्यसदिन एकत्रित गर्नेछौ (जसबारे कुनै प्रकारको सन्देह छैन) अल्लाहले कदापि (आफ्नो) प्रतिज्ञालाई भङ्ग गर्दैनन् ।

إِنَّ الَّذِينَ كَفَرُوا لَنْ تُغْنِيَ عَنْهُمْ أَمْوَالُهُمْ وَلَا أَوْلَادُهُمْ مِنَ اللَّهِ شَيْئًا ۖ وَأُولَٰئِكَ هُمْ وَقُودُ النَّارِ ﴿١١﴾

११. ती व्यक्तिहरू जसले अविश्वास गर्छन्, तिनीहरूको धन-सम्पत्ति तथा तिनीहरूका सन्तानहरू अल्लाहका विरुद्धमा कदापि काम लाग्ने छैनन् तथा यिनीहरू नै अग्निका इन्धन हुन् ।

كَدَأْبِ آلِ فِرْعَوْنَ ۙ وَالَّذِينَ مِنْ قَبْلِهِمْ ۚ كَذَّبُوا بِآيَاتِنَا فَأَخَذَهُمُ اللَّهُ بِذُنُوبِهِمْ ۗ وَاللَّهُ شَدِيدُ الْعِقَابِ ﴿١٢﴾

१२. (तिनीहरूको अवस्था) फिरौनका अनुयायी तथा उनीहरूभन्दा पहिलेका (मानिस) हरूको अवस्था अनुरूप छ । तिनीहरूले हाम्रा चिह्नहरूलाई अस्वीकार गरेका थिए, त्यसकारण तिनीहरूको पापको फलस्वरूप अल्लाहले तिनीहरूलाई दण्ड दिए, तथा अल्लाह दण्ड दिनमा कठोर छन् ।

قُلْ لِلَّذِينَ كَفَرُوا سَتُغْلَبُونَ وَتُحْشَرُونَ إِلَىٰ جَهَنَّمَ ۚ وَبِئْسَ الْمِهَادُ ﴿١٣﴾

१३. जसले अविश्वास गर्छन् तिनीहरूलाई भनिदेऊ, "निश्चय नै तिमीहरूलाई पराजित गरिनेछ तथा एकत्रित गरी नरकतर्फ लगिनेछ र त्यो विश्रामका निम्ति निकृष्ट स्थान हो ।

قَدْ كَانَ لَكُمْ آيَةٌ فِي فِئَتَيْنِ الْتَقَتَا ۖ فِئَةٌ تُقَاتِلُ فِي سَبِيلِ اللَّهِ وَأُخْرَىٰ كَافِرَةٌ يَرَوْنَهُمْ مِثْلَيْهِمْ رَأْيَ الْعَيْنِ ۚ وَاللَّهُ يُؤَيِّدُ بِنَصْرِهِ مَنْ يَشَاءُ ۗ إِنَّ فِي ذَٰلِكَ لَعِبْرَةً لِأُولِي الْأَبْصَارِ ﴿١٤﴾

१४. तिमीहरूका निम्ति ती परस्पर युद्धरत दुई दलमा निश्चय नै एउटा चिह्न थियो – तिनीहरूमध्ये एउटा दल अल्लाहको मार्गमा युद्ध गर्थ्यो भने अर्कोचाहिँ अविश्वासी पक्षको थियो । उनीहरू तिनीहरूलाई (आफ्ना) आँखाले आफूहरूभन्दा दुईगुणा ठूला देखिरहेका थिए । (अतः) अल्लाहले जसलाई इच्छा गर्छन् उसलाई आफ्नो सहायता प्रदान गरी दृढ तुल्याउँछन् । निश्चय नै, दृष्टिशक्ति रहेका व्यक्तिहरूका निम्ति यसमा एउटा शिक्षा छ ।

زُيِّنَ لِلنَّاسِ حُبُّ الشَّهَوَاتِ مِنَ النِّسَاءِ وَالْبَنِينَ وَالْقَنَاطِيرِ الْمُقَنْطَرَةِ مِنَ الذَّهَبِ وَالْفِضَّةِ وَالْخَيْلِ الْمُسَوَّمَةِ وَالْأَنْعَامِ وَالْحَرْثِ ۗ ذَٰلِكَ مَتَاعُ الْحَيَاةِ

१५. मनोवाञ्छित वस्तुहरूको (अर्थात्) स्त्रीहरू, पुत्रहरू तथा सुन चाँदीका सुरक्षित थाकहरू तथा उत्तम घोडाहरू, पशुहरू तथा अन्नबालीप्रतिको प्रेम मानिसहरूका निम्ति सुन्दर तुल्याएर

الدُّنْيَا ۚ وَاللَّهُ عِنْدَهُ حُسْنُ الْمَآبِ ﴿١٤﴾

देखाइएको छ । यी सांसारिक जीवनका साधनहरू हुन्, तर ती अल्लाह नै हुन् जसका जुनाफमा अत्योत्तम घर छ ।

قُلْ أَؤُنَبِّئُكُمْ بِخَيْرٍ مِنْ ذَٰلِكُمْ ۚ لِلَّذِينَ اتَّقَوْا عِنْدَ رَبِّهِمْ جَنَّاتٌ تَجْرِي مِنْ تَحْتِهَا الْأَنْهَارُ خَالِدِينَ فِيهَا وَأَزْوَاجٌ مُطَهَّرَةٌ وَرِضْوَانٌ مِنَ اللَّهِ ۗ وَاللَّهُ بَصِيرٌ بِالْعِبَادِ ﴿١٥﴾

१६. तिमी भन– "के म तिमीहरूलाई त्यो भन्दा उत्तम कुराको जानकारी दिऊँ?" ती व्यक्तिहरूका निम्ति जो अल्लाहको डर राख्छन् उनीहरूका प्रतिपालकका जुनाफमा यस्ता बगैँचाहरू छन् जसमुनि नदीहरू बगिरहेछन् । तिनीहरू त्यहाँ सदा बसोबास गर्नेछन् तथा (त्यहाँ अल्लाहले) पवित्र तुल्याएका जोडा तथा अल्लाहको प्रसन्नता समेत रहेको छ तथा अल्लाह (आफ्ना) भक्तहरूमाथि दृष्टि राख्ने गर्छन्,

الَّذِينَ يَقُولُونَ رَبَّنَا إِنَّنَا آمَنَّا فَاغْفِرْ لَنَا ذُنُوبَنَا وَقِنَا عَذَابَ النَّارِ ﴿١٦﴾

१७. ती व्यक्तिहरू जसले भन्छन्, "हे हाम्रा प्रतिपालक ! हामीले विश्वास स्थापना गर्‍यौं । त्यसकारण तिमी हाम्रा पापहरूप्रति हामीलाई क्षमा गरिदेउ तथा हामीलाई अग्निको दण्डबाट बचाउ ।"

الصَّابِرِينَ وَالصَّادِقِينَ وَالْقَانِتِينَ وَالْمُنْفِقِينَ وَالْمُسْتَغْفِرِينَ بِالْأَسْحَارِ ﴿١٧﴾

१८. ती धैर्यवान्, सत्यवान्, विनयशील (व्यक्तिहरू) तथा ती व्यक्तिहरू जसले अल्लाहको मार्गमा खर्च गर्छन् तथा ती व्यक्तिहरू जसले रात्रिको अन्तिम क्षणहरूमा क्षमायाचना गर्ने गर्छन् ।

شَهِدَ اللَّهُ أَنَّهُ لَا إِلَٰهَ إِلَّا هُوَ وَالْمَلَائِكَةُ وَأُولُو الْعِلْمِ قَائِمًا بِالْقِسْطِ ۚ لَا إِلَٰهَ إِلَّا هُوَ الْعَزِيزُ الْحَكِيمُ ﴿١٨﴾

१९. अल्लाह के साक्षी दिन्छन् भने, उनीबाहेक अन्य कोही उपास्य छैन– तथा फरिस्ताहरू र विद्वान् व्यक्तिहरू (पनि)– जसले सदा न्यायको देखरेख गर्छन्, उनीबाहेक अन्य कोही उपास्य छैन, उनी परम पराक्रमी, तत्त्वज्ञ हुन् ।

إِنَّ الدِّينَ عِنْدَ اللَّهِ الْإِسْلَامُ ۗ وَمَا اخْتَلَفَ الَّذِينَ أُوتُوا الْكِتَابَ إِلَّا مِنْ بَعْدِ

२०. निसन्देह, अल्लाहका दृष्टिमा (साँचो) धर्म इस्लाम (पूर्ण समर्पण) हो तथा ती व्यक्तिहरू जसलाई किताब प्रदान गरिएको थियो, तिनीहरूले ज्ञानको आगमनपश्चात् परस्पर द्वेषभावका कारण मतभेद गरे तथा

مَا جَآءَهُمُ الْعِلْمُ بَغْيًا بَيْنَهُمْ ۗ وَمَنْ يَّكْفُرْ بِاٰيٰتِ اللّٰهِ فَاِنَّ اللّٰهَ سَرِيْعُ الْحِسَابِ ﴿٢٠﴾

जसले अल्लाहका चिह्नहरूलाई अस्वीकार गर्छ, निश्चय नै अल्लाह शीघ्र हिसाब गर्ने गर्छन् ।

فَاِنْ حَآجُّوْكَ فَقُلْ اَسْلَمْتُ وَجْهِيَ لِلّٰهِ وَمَنِ اتَّبَعَنِ ۗ وَقُلْ لِّلَّذِيْنَ اُوْتُوا الْكِتٰبَ وَالْاُمِّيّٖنَ ءَاَسْلَمْتُمْ ۗ فَاِنْ اَسْلَمُوْا فَقَدِ اهْتَدَوْا ۚ وَاِنْ تَوَلَّوْا فَاِنَّمَا عَلَيْكَ الْبَلٰغُ ۗ وَاللّٰهُ بَصِيْرٌۢ بِالْعِبَادِ ﴿٢١﴾

२१. परन्तु यदि तिनीहरू तिमीसँग विवाद गर्छन् भने, तिमी भन, "मैले आफूलाई तथा जसले मेरो अनुसरण गर्छन्, ती व्यक्तिहरूले (पनि) अल्लाहप्रति समर्पित गरिदिएका छन् ।" तथा जसलाई किताब प्रदान गरिएको छ ती व्यक्तिहरूलाई र ती अशिक्षित व्यक्तिहरूलाई भन, "के तिमीहरू आज्ञापालन गर्छौ?" यदि तिनीहरूले आज्ञापालन गरे भने तिनीहरूलाई निश्चय नै सन्मार्ग प्रदान गरिनेछ, तर तिनीहरूले पिठ्यूं फर्काए भनेचाहिँ तिम्रो कर्तव्य केवल सन्देश पुऱ्याउनु मात्र हो । तथा अल्लाह (आफ्ना) भक्तहरूमाथि दृष्टि राख्छन् ।

اِنَّ الَّذِيْنَ يَكْفُرُوْنَ بِاٰيٰتِ اللّٰهِ وَيَقْتُلُوْنَ النَّبِيّٖنَ بِغَيْرِ حَقٍّ ۙ وَّيَقْتُلُوْنَ الَّذِيْنَ يَاْمُرُوْنَ بِالْقِسْطِ مِنَ النَّاسِ ۙ فَبَشِّرْهُمْ بِعَذَابٍ اَلِيْمٍ ﴿٢٢﴾

२२. निश्चय नै, ती व्यक्तिहरू जसले अल्लाहका चिह्नहरूलाई अस्वीकार गर्छन् तथा अन्यायपूर्वक नबीहरूको हत्या गर्न चाहन्छन् तथा त्यस्ता व्यक्तिहरूलाई हत्या गर्न चाहन्छन् जसले न्यायको उपदेश दिन्छन्– तिनीहरूलाई पीडादायक दण्डको सूचना देउ ।

اُولٰٓئِكَ الَّذِيْنَ حَبِطَتْ اَعْمَالُهُمْ فِي الدُّنْيَا وَالْاٰخِرَةِ ۫ وَمَا لَهُمْ مِّنْ نّٰصِرِيْنَ ﴿٢٣﴾

२३. ती उनै व्यक्तिहरू हुन् जसका कर्महरू यस संसारमा र परलोकमा व्यर्थ हुनेछन् तथा तिनीहरूको कुनै सहयोगी हुनेछैन ।

اَلَمْ تَرَ اِلَى الَّذِيْنَ اُوْتُوْا نَصِيْبًا مِّنَ الْكِتٰبِ يُدْعَوْنَ اِلٰى كِتٰبِ اللّٰهِ لِيَحْكُمَ بَيْنَهُمْ ثُمَّ يَتَوَلّٰى فَرِيْقٌ مِّنْهُمْ وَهُمْ مُّعْرِضُوْنَ ﴿٢٤﴾

२४. के तिमीलाई तिनीहरूबारे ज्ञात छैन जसलाई (उनीहरूको) ग्रन्थको एउटा अंश प्रदान गरिएको छ? तिनीहरूलाई अल्लाहको किताबतर्फ आमन्त्रित गरिन्छ ताकि त्यसले तिनीहरूमध्ये निर्णय गरोस्, परन्तु तिनीहरूमध्ये एउटा समूह विमुख

भई फर्कन्छ ।

२५. यसको कारण के हो भने तिनीहरू भन्छन्– "निर्धारित थोरै दिनहरूबाहेक अग्निले हामीलाई छुने छैन ।" तथा जुन मिथ्यालाई तिनीहरूले अँगाल्दछन् त्यसले तिनीहरूलाई आफ्ना धर्मका सम्बन्धमा धोका दिएको छ ।

ذٰلِكَ بِأَنَّهُمْ قَالُوا لَنْ تَمَسَّنَا النَّارُ إِلَّا أَيَّامًا مَعْدُودَاتٍ ۖ وَغَرَّهُمْ فِي دِينِهِمْ مَا كَانُوا يَفْتَرُونَ ﴿٢٥﴾

२६. जब हामी तिनीहरूलाई त्यस दिन एकत्रित गर्नेछौं, जसका सम्बन्धमा कुनै सन्देह छैन( तिनीहरूको अवस्था) कस्तो हुनेछ तथा तब प्रत्येक आत्मालाई उसको कमाईको पूरापूरा (मूल्य) प्रदान गरिनेछ तथा तिनीहरूप्रति अन्याय गरिनेछैन ?

فَكَيْفَ إِذَا جَمَعْنَاهُمْ لِيَوْمٍ لَا رَيْبَ فِيهِ وَوُفِّيَتْ كُلُّ نَفْسٍ مَا كَسَبَتْ وَهُمْ لَا يُظْلَمُونَ ﴿٢٦﴾

२७. तिमी भन, "हे साम्राज्यका स्वामी अल्लाह तिमी जसलाई इच्छा गर्छौ, साम्राज्य प्रदान गर्छौ, यसैगरी तिमी जसबाट इच्छा गर्छौ, साम्राज्य खोस्छौ तथा तिमी जसलाई इच्छा गर्छौ उच्चता प्रदान गर्छौ तथा जसलाई इच्छा गर्छौ अममानित गर्छौ । सम्पूर्ण मङ्गल तिम्रै हातमा छ । तथा निश्चय नै तिमीमा सम्पूर्ण कार्य गर्ने सामर्थ्य छ ।"

قُلِ اللَّهُمَّ مَالِكَ الْمُلْكِ تُؤْتِي الْمُلْكَ مَنْ تَشَاءُ وَتَنْزِعُ الْمُلْكَ مِمَّنْ تَشَاءُ وَتُعِزُّ مَنْ تَشَاءُ وَتُذِلُّ مَنْ تَشَاءُ ۖ بِيَدِكَ الْخَيْرُ ۖ إِنَّكَ عَلَىٰ كُلِّ شَيْءٍ قَدِيرٌ ﴿٢٧﴾

२८. "तिमी रात्रिलाई दिनमा प्रवेश गराउँछौ तथा दिनलाई रात्रिमा प्रवेश गराउँछौ, यसै गरी तिमी मृतबाट जीवन्त उत्पन्न गर्छौ तथा जीवन्तबाट मृत उत्पन्न गर्छौ तथा तिमी जसलाई इच्छा गर्छौ अनगिन्ति प्रदान गर्छौ ।"

تُولِجُ اللَّيْلَ فِي النَّهَارِ وَتُولِجُ النَّهَارَ فِي اللَّيْلِ ۖ وَتُخْرِجُ الْحَيَّ مِنَ الْمَيِّتِ وَتُخْرِجُ الْمَيِّتَ مِنَ الْحَيِّ ۖ وَتَرْزُقُ مَنْ تَشَاءُ بِغَيْرِ حِسَابٍ ﴿٢٨﴾

२९. विश्वासीहरूले विश्वासीहरूलाई छाडी अविश्वासीहरूलाई मित्र नबनाउन् – तथा जसले त्यसो गर्नेछ उसको अल्लाहसँग कुनै सम्बन्ध रहने छैन– केवल तिनीहरूबाट साबधानीपूर्वक बचेर रहनु

لَا يَتَّخِذِ الْمُؤْمِنُونَ الْكَافِرِينَ أَوْلِيَاءَ مِنْ دُونِ الْمُؤْمِنِينَ ۖ وَمَنْ يَفْعَلْ ذٰلِكَ فَلَيْسَ مِنَ اللَّهِ فِي شَيْءٍ إِلَّا أَنْ تَتَّقُوا مِنْهُمْ تُقَاةً ۗ وَيُحَذِّرُكُمُ اللَّهُ نَفْسَهُ ۗ وَ

إِلَى اللّٰهِ الْمَصِيْرُ ۝٢٨

तिमीहरूका निम्ति उचित हुनेछ । तथा अल्लाह तिमीहरूलाई स्वयम्बाट* सावधान गर्छन् तथा अल्लाह तर्फनै फर्कनु पर्नेछ ।

قُلْ إِنْ تُخْفُوْا مَا فِيْ صُدُوْرِكُمْ أَوْ تُبْدُوْهُ يَعْلَمْهُ اللّٰهُ ۗ وَيَعْلَمُ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْأَرْضِ ۗ وَاللّٰهُ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ۝٢٩

३०. तिमी भन, "तिमीहरूका अन्तःकरणमा रहेका कुरालाई चाहे तिमीहरू गुप्त राख अथवा प्रकट गर अल्लाहलाई ती (कुराहरू)बारे थाहा छ, आकाशमण्डल तथा पृथ्वीमा जे छ त्यसबारे अल्लाहलाई थाहा छ । तथा अल्लाहमा सम्पूर्ण कार्यहरू गर्ने सामर्थ्य छ ।"

يَوْمَ تَجِدُ كُلُّ نَفْسٍ مَّا عَمِلَتْ مِنْ خَيْرٍ مُّحْضَرًا ۚ وَّمَا عَمِلَتْ مِنْ سُوْٓءٍ ۚ تَوَدُّ لَوْ أَنَّ بَيْنَهَا وَبَيْنَهٗٓ أَمَدًا بَعِيْدًا ۗ وَيُحَذِّرُكُمُ اللّٰهُ نَفْسَهٗ ۗ وَاللّٰهُ رَءُوْفٌ بِالْعِبَادِ ۝٣٠

३१. त्यस दिन(प्रति सावधान होऊ), जुनदिन प्रत्येक आत्माले आफ्नो सामुन्ने आफूले कमाएको (सम्पूर्ण) पूण्य तथा आफूले आर्जन गरेको (सम्पूर्ण) पापलाई (पनि) उपस्थित पाउनेछ । उसको र त्यस (पापको) बीचमा लामो दूरी भैदिए हुन्थ्यो भन्ने त्यसबेला उसले इच्छा गर्नेछ । अल्लाहले तिमीहरूलाई आफ्नो दण्डप्रति सावधान गर्छन्, अल्लाह (आफ्ना) भक्तहरूप्रति अतिकरुणाशील छन् ।

قُلْ إِنْ كُنْتُمْ تُحِبُّوْنَ اللّٰهَ فَاتَّبِعُوْنِيْ يُحْبِبْكُمُ اللّٰهُ وَيَغْفِرْ لَكُمْ ذُنُوْبَكُمْ ۗ وَاللّٰهُ غَفُوْرٌ رَّحِيْمٌ ۝٣١

३२. तिमी भन, "यदि तिमीहरू अल्लाहसँग प्रेम गर्छौ भने मेरो अनुसरण गर, (तब नै) अल्लाहले तिमीहरूप्रति प्रेम गर्नेछन् तथा तिमीहरूका त्रुटिहरूप्रति तिमीहरूलाई क्षमा प्रदान गर्नेछन् तथा अल्लाह परम क्षमाशील, करुणाशील छन् ।

قُلْ أَطِيْعُوا اللّٰهَ وَالرَّسُوْلَ ۚ فَإِنْ تَوَلَّوْا فَإِنَّ اللّٰهَ لَا يُحِبُّ الْكٰفِرِيْنَ ۝٣٢

३३. तिमी भन, "अल्लाह तथा सन्देशवाहकका आज्ञाकारी बन," परन्तु

---

* अरबी शब्द ('युहाज्जिरो कुमुल्लाहो नाफ्साहु')(يُحَذِّرُكُمُ اللّٰهُ نَفْسَهٗ) को शाब्दिक अर्थ के हो भने, "अल्लाह तिमीहरूलाई स्वयम्बाट सावधान गर्छन्," अर्थात् उनका निर्देशन र परामर्शहरूका सम्बन्धमा मनपरी गर्नबाट उनले तिमीहरूलाई सावधान गर्छन् ।

यदि तिनीहरू विमुख हुन्छन् भने अल्लाहले अविश्वासीहरूलाई प्रेम गर्दैनन् (भनी जान)।

إِنَّ اللّٰهَ اصْطَفٰى اٰدَمَ وَنُوْحًا وَّاٰلَ اِبْرٰهِيْمَ وَاٰلَ عِمْرٰنَ عَلَى الْعٰلَمِيْنَ ﴿٣٣﴾

३४. अल्लाहले सम्पूर्ण मानवजातिमध्ये आदम तथा नूह तथा इब्राहिमका वंश र इमरान्का वंशलाई चयन गरेका थिए ।

ذُرِّيَّةً بَعْضُهَا مِنْ بَعْضٍ ۗ وَاللّٰهُ سَمِيْعٌ عَلِيْمٌ ﴿٣٤﴾

३५. त्यो एउटा यस्तो वंश थियो जो एक आपसमा सम्बन्धित थियो तथा अल्लाह सर्वस्रोता, सर्वज्ञ छन् ।

اِذْ قَالَتِ امْرَاَتُ عِمْرٰنَ رَبِّ اِنِّيْ نَذَرْتُ لَكَ مَا فِيْ بَطْنِيْ مُحَرَّرًا فَتَقَبَّلْ مِنِّيْ ۚ اِنَّكَ اَنْتَ السَّمِيْعُ الْعَلِيْمُ ﴿٣٥﴾

३६. (स्मरण गर) जब इमरानकी (एउटी) महिलाले भनेकी थिइन् – "हे मेरा प्रतिपालक ! मेरो गर्भमा जे छ त्यसलाई तिम्रो सेवामा समर्पित गर्ने भाकल गरेकी छु । अत: मेरोतर्फबाट यसलाई स्विकार गर, वास्तवमा तिमी नै एकमात्र सर्वस्रोता, सर्वज्ञ हौ ।

فَلَمَّا وَضَعَتْهَا قَالَتْ رَبِّ اِنِّيْ وَضَعْتُهَاۤ اُنْثٰى ۗ وَاللّٰهُ اَعْلَمُ بِمَا وَضَعَتْ ۗ وَلَيْسَ الذَّكَرُ كَالْاُنْثٰى ۚ وَاِنِّيْ سَمَّيْتُهَا مَرْيَمَ وَاِنِّيْۤ اُعِيْذُهَا بِكَ وَذُرِّيَّتَهَا مِنَ الشَّيْطٰنِ الرَّجِيْمِ ﴿٣٦﴾

३७. अत: जब उनले उसलाई जन्माइन् तब उनले भनिन् – "हे मेरा प्रतिपालक ! मैले एउटी छोरी जन्माएकी छु" – वस्तुत: जसलाई उनले जन्माएको थियो त्यसलाई अल्लाहले सर्वाधिक जान्दछन् । तथा बालक (जसबारे उनले सोचेकी थिइन्) । - उनले जन्माएकी) त्यो बालिका जस्तो हुन सक्दैनथ्यो ।– "तथा मैले त्यसको नाम मरियम राखें, तथा म उसलाई र उसका सन्तानलाई तिरस्कृत सैतानबाट तिम्रो शरणमा समपर्ण गर्छु ।"

فَتَقَبَّلَهَا رَبُّهَا بِقَبُوْلٍ حَسَنٍ وَّاَنْۢبَتَهَا نَبَاتًا حَسَنًا ۙ وَّكَفَّلَهَا زَكَرِيَّا ۚ كُلَّمَا دَخَلَ عَلَيْهَا زَكَرِيَّا الْمِحْرَابَ ۙ وَجَدَ عِنْدَهَا رِزْقًا ۚ قَالَ يٰمَرْيَمُ اَنّٰى لَكِ هٰذَا ۗ قَالَتْ هُوَ مِنْ عِنْدِ اللّٰهِ ۗ اِنَّ اللّٰهَ يَرْزُقُ مَنْ يَّشَاۤءُ بِغَيْرِ حِسَابٍ ﴿٣٧﴾

३८. तब उनका प्रतिपालकले उनलाई कृपापूर्वक ग्रहण गरे तथा उनलाई राम्ररी हुर्काए र जकारियालाई उनका संरक्षक बनाए । जब जकारिया उनको घरको कक्षमा उनीसमक्ष उपस्थित हुन्थे तब उनीकहाँ खाद्यादि पाउँथे । उनले भने, "हे मरियम, यो तिम्रो निम्ति कहाँबाट आएको

हो ? उनले भनिन् – "यो अल्लाहको जुनाफबाट हो ।" निश्चय नै अल्लाहले जसलाई इच्छा गर्छन् उसलाई अतुल्य प्रदान गर्छन् ।

३९. तब जकारियाले आफ्ना प्रतिपालकलाई (तत्कालै) पुकार्दै भने – "हे मेरा प्रतिपालक ! मलाई आफ्ना जुनाफबाट पवित्र सन्तान प्रदान गर । तिमी निश्चय नै अत्याधिक प्रार्थना सुन्ने गर्छौ ।"

هُنَالِكَ دَعَا زَكَرِيَّا رَبَّهٗ ۚ قَالَ رَبِّ هَبْ لِيْ مِنْ لَّدُنْكَ ذُرِّيَّةً طَيِّبَةً ۚ اِنَّكَ سَمِيْعُ الدُّعَآءِ ﴿٣٨﴾

४०. जब उनी प्रार्थनालयमा प्रार्थनारत थिए फरिस्ताहरूले उनलाई बोलाएर भने: "अल्लाहले तिमीलाई यह्याको शुभसन्देश प्रदान गर्छन् जसले अल्लाहको एउटा बचनलाई सत्य साबित गर्नेछ– (तथा त्यो) सम्मानित, निष्कलङ्क र (पापबाट) रोक्ने तथा सत्यवादीहरूमध्येबाट एउटा नबी हुनेछ ।

فَنَادَتْهُ الْمَلٰٓئِكَةُ وَهُوَ قَآئِمٌ يُّصَلِّيْ فِي الْمِحْرَابِ ۙ اَنَّ اللّٰهَ يُبَشِّرُكَ بِيَحْيٰى مُصَدِّقًا بِكَلِمَةٍ مِّنَ اللّٰهِ وَسَيِّدًا وَّحَصُوْرًا وَّنَبِيًّا مِّنَ الصّٰلِحِيْنَ ﴿٣٩﴾

४१. उनले भने, "हे मेरा प्रतिपालक, जब मलाई बुढेसकाल लागिसकेको छ र मेरी पत्नी पनि बाँझी छ भने कसरी मलाई पुत्र प्राप्त हुनसक्छ र ? उनले भने, "अल्लाहको (तरीका) यस्तै छ । उनी जे इच्छा गर्छन् त्यो (कार्य) गर्छन् ।"

قَالَ رَبِّ اَنّٰى يَكُوْنُ لِيْ غُلٰمٌ وَّقَدْ بَلَغَنِيَ الْكِبَرُ وَامْرَاَتِيْ عَاقِرٌ ۚ قَالَ كَذٰلِكَ اللّٰهُ يَفْعَلُ مَا يَشَآءُ ﴿٤٠﴾

४२. उनले भने, "हे मेरा प्रतिपालक ! मेरो निम्ति कुनै चिह्न निर्धारण गरिदेउ । उनले भने, "तिम्रो निम्ति के चिह्न छ भने तीनदिनसम्म तिमीलें सांकेतिक (भाषामा) बाहेक कसैसँग नबोल्नू तथा आफ्ना प्रतिपालकलाई अत्याधिक स्मरण गर्नू र बिहान र बेलुकी उनको प्रशंसा गर्नू

قَالَ رَبِّ اجْعَلْ لِّيْٓ اٰيَةً ۚ قَالَ اٰيَتُكَ اَلَّا تُكَلِّمَ النَّاسَ ثَلٰثَةَ اَيَّامٍ اِلَّا رَمْزًا ۚ وَاذْكُرْ رَّبَّكَ كَثِيْرًا وَّسَبِّحْ بِالْعَشِيِّ وَالْاِبْكَارِ ﴿٤١﴾

४३. तथा (स्मरण गर) जब फरिस्ताहरूले भने, "हे मरियम निश्चय नै अल्लाहले

وَاِذْ قَالَتِ الْمَلٰٓئِكَةُ يٰمَرْيَمُ اِنَّ اللّٰهَ اصْطَفٰىكِ وَطَهَّرَكِ وَاصْطَفٰىكِ عَلٰى

نِسَآءِ الْعٰلَمِيْنَ ﴿٤٢﴾

तिमीलाई चुनेका छन् तथा पवित्र तुल्याएका छन् तथा सम्पूर्ण जातिका महिलाहरूमध्ये तिमीलाई नै उनले छानेका छन् ।"

يٰمَرْيَمُ اقْنُتِيْ لِرَبِّكِ وَاسْجُدِيْ وَارْكَعِيْ مَعَ الرّٰكِعِيْنَ ﴿٤٣﴾

४४. "हे मरियम, आफ्ना प्रतिपालककी आज्ञाकारी बन तथा दण्डवत् गर तथा अल्लाहको उपासना गर्नेहरूसित मिलेर (केवल उनकै ) उँपासना गर ।"

ذٰلِكَ مِنْ اَنْۢبَآءِ الْغَيْبِ نُوْحِيْهِ اِلَيْكَ ؕ وَمَا كُنْتَ لَدَيْهِمْ اِذْ يُلْقُوْنَ اَقْلَامَهُمْ اَيُّهُمْ يَكْفُلُ مَرْيَمَ ۪ وَمَا كُنْتَ لَدَيْهِمْ اِذْ يَخْتَصِمُوْنَ ﴿٤٤﴾

४५. यो अदृश्य सन्देशहरूमध्येको हो जसलाई हामी तिमीप्रति आकाशवाणी गर्दछौं । तथा जब तिनीहरूले आफ्ना वाण तिनीहरूमध्ये को चाहिँ मरियमको संरक्षक बन्नेछ भनी हानेका थिए त्यस समय तिमी तिनीहरूसमक्ष थिएनौ, न त तिमी त्यस समय तिनीहरूसमक्ष थियौ जब तिनीहरू परस्पर विवादमा फसेका थिए ।

اِذْ قَالَتِ الْمَلٰٓئِكَةُ يٰمَرْيَمُ اِنَّ اللّٰهَ يُبَشِّرُكِ بِكَلِمَةٍ مِّنْهُ ۖ اسْمُهُ الْمَسِيْحُ عِيْسَى ابْنُ مَرْيَمَ وَجِيْهًا فِى الدُّنْيَا وَالْاٰخِرَةِ وَمِنَ الْمُقَرَّبِيْنَ ﴿٤٥﴾

४६. जब फरिस्ताहरूले भने, "हे मरियम, अल्लाह तिमीलाई आफ्नो एउटा शब्दद्वारा शुभसन्देश दिन्छन्, तिनको नाम मसीहा मरियमपुत्र ईसा (हुनेछ), जो यस संसार तथा परलोकमा पनि सम्मानित हुनुको साथै (अल्लाहको) निकटताप्राप्त व्यक्तिहरूमध्ये हुनेछ ।

وَيُكَلِّمُ النَّاسَ فِى الْمَهْدِ وَكَهْلًا وَّمِنَ الصّٰلِحِيْنَ ﴿٤٦﴾

४७. "अनि कोक्रामा (बाल्यावस्थामा) र अधवैंसमा पनि उनले मानिसहरूसँग वार्ता गर्नेछन् तथा उनी धार्मिक पुरुषहरूमध्येका हुनेछन् ।

قَالَتْ رَبِّ اَنّٰى يَكُوْنُ لِيْ وَلَدٌ وَّلَمْ يَمْسَسْنِيْ بَشَرٌ ؕ قَالَ كَذٰلِكِ اللّٰهُ يَخْلُقُ مَا يَشَآءُ ؕ اِذَا قَضٰٓى اَمْرًا فَاِنَّمَا يَقُوْلُ لَهٗ كُنْ فَيَكُوْنُ ﴿٤٧﴾

४८. उनले भनिन्, "हे मेरा प्रतिपालक ! कुनै मानिसले मलाई स्पर्श नै गरेको छैन भने म कसरी पुत्र प्राप्त गरुँली?" उनले भने, "अल्लाहको -तरीका) यस्तै छ, उनले जे इच्छा गर्छन्, सृष्टि गर्छन् । जब उनले कुनै कुराको निर्णय गर्छन्, (तब) उनी

त्यसलाई भन्छन्, "भएस !" अनि त्यो हुन जान्छ* ।

وَيُعَلِّمُهُ الْكِتٰبَ وَالْحِكْمَةَ وَالتَّوْرٰىةَ وَالْاِنْجِيْلَ ﴿٤٨﴾

४९. "तथा उनले उनलाई पुस्तक र तथ्यज्ञान तथा तौरात र इन्जिल (उपदेश) सिकाउने छन्,"

وَرَسُوْلًا اِلٰى بَنِيْٓ اِسْرَآءِيْلَ ۙ اَنِّيْ قَدْ جِئْتُكُمْ بِاٰيَةٍ مِّنْ رَّبِّكُمْ ۙ اَنِّيْٓ اَخْلُقُ لَكُمْ مِّنَ الطِّيْنِ كَهَيْـَٔةِ الطَّيْرِ فَاَنْفُخُ فِيْهِ فَيَكُوْنُ طَيْرًاۢ بِاِذْنِ اللّٰهِ ۚ وَاُبْرِئُ الْاَكْمَهَ وَالْاَبْرَصَ وَاُحْيِ الْمَوْتٰى بِاِذْنِ اللّٰهِ ۚ وَاُنَبِّئُكُمْ بِمَا تَاْكُلُوْنَ وَمَا تَدَّخِرُوْنَ ۙ فِيْ بُيُوْتِكُمْ ۭ اِنَّ فِيْ ذٰلِكَ لَاٰيَةً لَّكُمْ اِنْ كُنْتُمْ مُّؤْمِنِيْنَ ﴿٤٩﴾

५०. "तथा उनलाई इजरायलका सन्तानका निम्ति एक सन्देशवाहक (बनाउनेछन् जसले भन्नेछन्) : "म तिमीहरूसमक्ष तिमीहरूका प्रतिपालकका तर्फबाट एउटा चिह्न लिएर आएको छु, (त्यो के हो भने) म तिमीहरूका निम्ति माटोद्वारा एउटा पक्षी आकृतिको (प्राणी) पैदा गर्नेछु । त्यसपछि म त्यसमा (एउटा नवीन आत्मा) प्रवेश गराउने छु तथा त्यो अल्लाहको आदेशले एउटा उड्ने प्राणी बन्नेछ, तथा म अन्धालाई र कुष्ठरोगीलाई निरोगी तुल्याउने छु, तथा अल्लाहको आदेशले मृतहरूलाई जीवित पार्नेछु तथा म तिमीहरूले खानेवस्तुहरू र आफ्ना घरमा तिमीहरूले एकत्रित गर्ने वस्तुहरूबारे तिमीहरूसमक्ष घोषणा गर्नेछु । यदि तिमीहरू विश्वास गर्छौ भने निश्चय नै यस कुरामा तिमीहरूका निम्ति एउटा चिह्न छ ।

وَمُصَدِّقًا لِّمَا بَيْنَ يَدَيَّ مِنَ التَّوْرٰىةِ وَلِاُحِلَّ لَكُمْ بَعْضَ الَّذِيْ حُرِّمَ عَلَيْكُمْ وَجِئْتُكُمْ بِاٰيَةٍ مِّنْ رَّبِّكُمْ ۣ فَاتَّقُوا اللّٰهَ وَاَطِيْعُوْنِ ﴿٥٠﴾

५१. "तथा म त्यसलाई जुन मभन्दा अघि आएको छ अर्थात् तौरातलाई सत्य साबित गर्न तथा यस्ता केही वस्तुहरू जुन तिमीहरूका निम्ति वर्जित थिए तिनलाई तिमीहरूका निम्ति वैध तुल्याउन (आएको हुँ) तथा म तिमीहरूका प्रतिपालकका तर्फबाट एउटा चिह्न लिएर आएको छु, त्यसकारण तिमीहरू अल्लाहको डर राख

* "भएस् ! अनि त्यो हुन जान्छ" भन्नाले शून्यबाट स्वयमेव अस्तित्वमा आउनु भन्ने दर्शाउँदैन । यसको अर्थ अल्लाहको कामनाको क्षण हो, उनको कामनाले आकृति धारण गर्न लाग्छ र अन्ततोगत्वा त्यो उनको इच्छानुसार हुन जान्छ ।

र मेरो आज्ञापालन गर ।

إِنَّ اللّٰهَ رَبِّيْ وَرَبُّكُمْ فَاعْبُدُوْهُ ؕ هٰذَا صِرَاطٌ مُّسْتَقِيْمٌ ﴿٥٢﴾

५२. "अल्लाह निश्चय नै मेरा पालनकर्ता र तिमीहरूका पालनकर्ता हुन्, अतः उनको उपासना गरः यही सन्मार्ग हो ।"

فَلَمَّآ اَحَسَّ عِيْسٰى مِنْهُمُ الْكُفْرَ قَالَ مَنْ اَنْصَارِيْٓ اِلَى اللّٰهِ ؕ قَالَ الْحَوَارِيُّوْنَ نَحْنُ اَنْصَارُ اللّٰهِ ۚ اٰمَنَّا بِاللّٰهِ ۚ وَاشْهَدْ بِاَنَّا مُسْلِمُوْنَ ﴿٥٣﴾

५३. अनि जब ईसाले तिनीहरूको अविश्वास बोध गरे, तब उनले भने, "अल्लाहका निम्ति को मेरा सहयोगी बन्नेछन्?" अनुयायीहरूले उत्तर दिए, "हामी अल्लाहका सहयोगी हौं, हामीले अल्लाहप्रति विश्वास गरेको छौ । हामी आज्ञाकारी हौं भनी तिमी साक्षी बस ।"

رَبَّنَآ اٰمَنَّا بِمَآ اَنْزَلْتَ وَاتَّبَعْنَا الرَّسُوْلَ فَاكْتُبْنَا مَعَ الشّٰهِدِيْنَ ﴿٥٤﴾

५४. "हे हाम्रा प्रतिपालक ! तिमीले जुन कुरा अवतीर्ण गरेका छौ त्यसप्रति हामी विश्वास गर्छौं तथा हामी यस सन्देशवाहकका अनुयायी बन्छौं । त्यसकारण हामीलाई तिमी साक्षीहरूमा लेख ।"

وَمَكَرُوْا وَمَكَرَ اللّٰهُ ؕ وَاللّٰهُ خَيْرُ الْمٰكِرِيْنَ ﴿٥٥﴾

५५. तथा तिनीहरूले योजना बनाए र अल्लाहले -पनि) योजना बनाए, तथा अल्लाह सबै योजनाकारहरूभन्दा उत्तम योजनाकार हुन् ।

اِذْ قَالَ اللّٰهُ يٰعِيْسٰٓى اِنِّيْ مُتَوَفِّيْكَ وَرَافِعُكَ اِلَيَّ وَمُطَهِّرُكَ مِنَ الَّذِيْنَ كَفَرُوْا وَجَاعِلُ الَّذِيْنَ اتَّبَعُوْكَ فَوْقَ الَّذِيْنَ كَفَرُوْٓا اِلٰى يَوْمِ الْقِيٰمَةِ ۚ ثُمَّ اِلَيَّ مَرْجِعُكُمْ فَاَحْكُمُ بَيْنَكُمْ فِيْمَا كُنْتُمْ فِيْهِ تَخْتَلِفُوْنَ ﴿٥٦﴾

५६. जब अल्लाहले भने, "हे ईसा, म तिमीलाई (स्वाभाविक) मृत्यु प्रदान गर्नेछु तथा तिमीलाई आफूसमक्ष पदमर्यादा प्रदान गर्नेछु, तथा अविश्वासीहरू (का आरोपहरूबाट) तिमीलाई निष्कलङ्क तुल्याउनेछु तथा तिम्रा अनुयायीहरूलाई पुनरुत्थानका दिनसम्म अविश्वासीहरूमाथि विजयी राख्नेछु । तब तिमीहरूको पुनरागमन मतर्फै हुनेछ, अनि म तिमीहरूबीच तिमीहरूले परस्पर मतभेद गर्ने गरेका कुराहरूको निर्णय गर्नेछु ।

فَأَمَّا الَّذِيْنَ كَفَرُوْا فَأُعَذِّبُهُمْ عَذَابًا شَدِيْدًا فِى الدُّنْيَا وَالْاٰخِرَةِ ز وَمَا لَهُمْ مِّنْ نّٰصِرِيْنَ ﴿٥٧﴾

५७. "अनि जुन व्यक्तिहरू अविश्वासी छन्, तिनीहरूलाई यस संसारमा र परलोकमा समेत म कठोर दण्ड दिनेछु र तिनीहरूको कोही सहयोगी हुनेछैन ।

وَأَمَّا الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ فَيُوَفِّيْهِمْ أُجُوْرَهُمْ ط وَاللّٰهُ لَا يُحِبُّ الظّٰلِمِيْنَ ﴿٥٨﴾

५८. "तथा ती व्यक्तिहरू जसले विश्वास गर्छन् र पुण्यकार्य गर्छन्, तिनीहरूलाई उनले तिनीहरूको पूर्ण फल प्रदान गर्नेछन् । तथा अल्लाह अन्यायकारीहरूसित प्रेम गर्दैनन् ।"

ذٰلِكَ نَتْلُوْهُ عَلَيْكَ مِنَ الْاٰيٰتِ وَالذِّكْرِ الْحَكِيْمِ ﴿٥٩﴾

५९. यो त्यो हो (अर्थात्) चिह्नहरू र ज्ञानपूर्ण स्मरण पत्रबाट तिमीसमक्ष हामी पढेर सुनाउँदछौं ।

إِنَّ مَثَلَ عِيْسٰى عِنْدَ اللّٰهِ كَمَثَلِ اٰدَمَ ط خَلَقَهٗ مِنْ تُرَابٍ ثُمَّ قَالَ لَهٗ كُنْ فَيَكُوْنُ ﴿٦٠﴾

६०. निश्चय नै, अल्लाहका निकट ईसाको अवस्था आदमको अवस्थासदृश रहेको छ । उनले शुष्क माटोद्वारा उनको सृष्टि गरे, त्यसपछि उनले उनलाई भने, "होउ !" अनि उनी भइहाले ।

اَلْحَقُّ مِنْ رَّبِّكَ فَلَا تَكُنْ مِّنَ الْمُمْتَرِيْنَ ﴿٦١﴾

६१. (यो) तिम्रा प्रतिपालकका तर्फबाट नितान्त सत्य (हो) । त्यसकारण तिमी सन्देह गर्ने व्यक्तिहरूमध्येको नबन ।

فَمَنْ حَاۤجَّكَ فِيْهِ مِنْ بَعْدِ مَا جَاۤءَكَ مِنَ الْعِلْمِ فَقُلْ تَعَالَوْا نَدْعُ أَبْنَاۤءَنَا وَأَبْنَاۤءَكُمْ وَنِسَاۤءَنَا وَنِسَاۤءَكُمْ وَأَنْفُسَنَا وَأَنْفُسَكُمْ قف ثُمَّ نَبْتَهِلْ فَنَجْعَلْ لَّعْنَتَ اللّٰهِ عَلَى الْكٰذِبِيْنَ ﴿٦٢﴾

६२. अब जुन व्यक्ति तिमीसमक्ष शिक्षाको आगमनपश्चात् उसका सम्बन्धमा तर्क गर्छ, (त्यसलाई) भन, "आऊ, हामी हाम्रा पुत्रहरूलाई र तिमीहरूका पुत्रहरूलाई तथा हाम्रा स्त्रीहरूलाई र तिमीहरूका स्त्रीहरूलाई, तथा हाम्रा मानिसहरूलाई र तिमीहरूका मानिसहरूलाई बोलाऔं । त्यसपछि अनुनय-विनयका साथ प्रार्थना गरौं तथा झुट्टो बोल्नेहरूमाथि अल्लाहको अभिशापको कामना गरौं ।

إِنَّ هٰذَا لَهُوَ الْقَصَصُ الْحَقُّ ج وَمَا مِنْ إِلٰهٍ إِلَّا اللّٰهُ ط وَإِنَّ اللّٰهَ لَهُوَ الْعَزِيْزُ الْحَكِيْمُ ﴿٦٣﴾

६३. वास्तवमा यही नै सत्य विवरण हो । अल्लाहबाहेक कोही पनि उपासनायोग्य छैन, र निश्चय नै, अल्लाह नै विजयी र

तत्वज्ञ छन् ।

فَإِنْ تَوَلَّوْا فَإِنَّ اللَّهَ عَلِيمٌ بِالْمُفْسِدِينَ ﴿٦٣﴾

६४. परन्तु यदि तिनीहरू विमुख भए भने, अल्लाहले उपद्रवीहरूलाई राम्ररी चिनेका छन् (भनी सम्झी राख) ।

قُلْ يَا أَهْلَ الْكِتَابِ تَعَالَوْا إِلَىٰ كَلِمَةٍ سَوَاءٍ بَيْنَنَا وَبَيْنَكُمْ أَلَّا نَعْبُدَ إِلَّا اللَّهَ وَلَا نُشْرِكَ بِهِ شَيْئًا وَلَا يَتَّخِذَ بَعْضُنَا بَعْضًا أَرْبَابًا مِنْ دُونِ اللَّهِ ۚ فَإِنْ تَوَلَّوْا فَقُولُوا اشْهَدُوا بِأَنَّا مُسْلِمُونَ ﴿٦٤﴾

६५. तिमी भन, "हे पुस्तकप्राप्त व्यक्तिहरू हो ! एउटा यस्तो कुरातर्फ आऊ जुन हामी र तिमीहरूमा बराबर छ – अर्थात् हामी अल्लाहबाहेक कसैको उपासना नगरौं तथा कुनै वस्तुलाई उनको भागीदार नबनाऊँ । न त हामी अल्लाहलाई छाडी आपसमा एक-अर्कालाई नै प्रतिपालक बनाऔं ।" परन्तु यदि तिनीहरू विमुख भए भने (तिनीहरूलाई ) भन– तिमीहरू हामी (अल्लाहप्रति) समर्पित छौं भनी साक्षी देऊ ।"

يَا أَهْلَ الْكِتَابِ لِمَ تُحَاجُّونَ فِي إِبْرَاهِيمَ وَمَا أُنْزِلَتِ التَّوْرَاةُ وَالْإِنْجِيلُ إِلَّا مِنْ بَعْدِهِ ۚ أَفَلَا تَعْقِلُونَ ﴿٦٥﴾

६६. हे पुस्तकप्राप्त मानिसहरू हो ! तिमीहरू इब्राहिमका सम्बन्धमा किन तर्क गर्छौ? वस्तुतः तौरात र इन्जिल उनीपश्चात् अवतीर्ण गरिएका थिए तब के तिमीहरू बुझ्दैनौ?"

هَا أَنْتُمْ هَٰؤُلَاءِ حَاجَجْتُمْ فِيمَا لَكُمْ بِهِ عِلْمٌ فَلِمَ تُحَاجُّونَ فِيمَا لَيْسَ لَكُمْ بِهِ عِلْمٌ ۚ وَاللَّهُ يَعْلَمُ وَأَنْتُمْ لَا تَعْلَمُونَ ﴿٦٦﴾

६७. सुन ! तिमीहरू ती व्यक्तिहरू हौ जसले आफूलाई ज्ञात कुराहरूका सम्बन्धमा तर्क गरिआएका थियौ । तब किन (अब) तिमीहरू ती कुराहरूका सम्बन्धमा तर्क गर्छौ जसबारे तिमीहरूलाई (कुनै) ज्ञान (नै) छैन । वस्तुतः अल्लाह जान्दछन्, तर तिमीहरू जान्दैनौ ।

مَا كَانَ إِبْرَاهِيمُ يَهُودِيًّا وَلَا نَصْرَانِيًّا وَلَٰكِنْ كَانَ حَنِيفًا مُسْلِمًا وَمَا كَانَ مِنَ الْمُشْرِكِينَ ﴿٦٧﴾

६८. इब्राहिम न त यहुदी थिए न खिस्तान, परन्तु उनी सधैं (अल्लाहतर्फ) नतमस्तक रहने (र उनकै) आज्ञाकारी थिए, तथा उनी ती व्यक्तिहरूमध्ये थिएनन् जसले (अल्लाहका ) भागीदार तुल्याउने गर्छन् ।

إِنَّ أَوْلَى النَّاسِ بِإِبْرَاهِيمَ لَلَّذِينَ اتَّبَعُوهُ وَهَٰذَا النَّبِيُّ وَالَّذِينَ آمَنُوا ۗ وَاللَّهُ وَلِيُّ الْمُؤْمِنِينَ ﴿٦٩﴾

६९. निश्चय नै, मानिसहरूमध्ये इब्राहिमका सर्वाधिक निकट ती व्यक्तिहरू हुन्, जसले उनको अनुसरण गरे तथा यी नबी र विश्वासीजनहरू, अनि अल्लाह विश्वासीहरू का मित्र हुन् ।

وَدَّت طَّائِفَةٌ مِّنْ أَهْلِ الْكِتَابِ لَوْ يُضِلُّونَكُمْ وَمَا يُضِلُّونَ إِلَّا أَنفُسَهُمْ وَمَا يَشْعُرُونَ ﴿٧٠﴾

७०. पुस्तकप्राप्त मानिसहरूमध्ये एउटा दलले तिमीहरूलाई विपथ गर्न पाए हुन्थ्यो भन्ने मनोवाञ्छा राख्छन्, परन्तु तिनीहरू आफूबाहेक कसैलाई विपथ गर्दैनन्, तर तिनीहरू भने बुझ्दैनन् ।

يَا أَهْلَ الْكِتَابِ لِمَ تَكْفُرُونَ بِآيَاتِ اللَّهِ وَأَنتُمْ تَشْهَدُونَ ﴿٧١﴾

७१. हे पुस्तकप्राप्त मानिसहरू हो ! जब तिमीहरूले साक्षी दिइसकेका छौ भने किन तिमीहरू अल्लाहका चिह्नहरूलाई अस्वीकार गर्छौ ?

يَا أَهْلَ الْكِتَابِ لِمَ تَلْبِسُونَ الْحَقَّ بِالْبَاطِلِ وَتَكْتُمُونَ الْحَقَّ وَأَنتُمْ تَعْلَمُونَ ﴿٧٢﴾

७२. हे पुस्तकप्राप्त मानिसहरू हो ! किन तिमीहरू सत्यलाई असत्यसँग मिलाउँछौ तथा जानीबुझीकन सत्यलाई लुकाउँछौ ।

وَقَالَت طَّائِفَةٌ مِّنْ أَهْلِ الْكِتَابِ آمِنُوا بِالَّذِي أُنزِلَ عَلَى الَّذِينَ آمَنُوا وَجْهَ النَّهَارِ وَاكْفُرُوا آخِرَهُ لَعَلَّهُمْ يَرْجِعُونَ ﴿٧٣﴾

७३. तथा पुस्तकप्राप्त मानिसहरूमध्ये एउटा समूहले भन्छ, "विश्वासीहरूप्रति अवतीर्ण गरिएको कुराप्रति दिनको प्रारम्भिक भागमा विश्वास गर तथा त्यसको अन्तिम भागमा अविश्वास गर, सम्भवतः तिनीहरू फिरेर आउने छन् ।

وَلَا تُؤْمِنُوا إِلَّا لِمَن تَبِعَ دِينَكُمْ قُلْ إِنَّ الْهُدَىٰ هُدَى اللَّهِ أَن يُؤْتَىٰ أَحَدٌ مِّثْلَ مَا أُوتِيتُمْ أَوْ يُحَاجُّوكُمْ عِندَ رَبِّكُمْ ۗ قُلْ إِنَّ الْفَضْلَ بِيَدِ اللَّهِ يُؤْتِيهِ مَن يَشَاءُ ۗ وَاللَّهُ وَاسِعٌ عَلِيمٌ ﴿٧٤﴾

७४. "तथा जसले तिमीहरूको धर्मको अनुसरण गर्छ त्यस व्यक्तिबाहेक अन्य कसैको आज्ञा नमान,"– (हे सन्देशवाहक) तिमी भन, "निश्चय नै, मार्गदर्शन, ता अल्लाहको मार्गदर्शन नै हो, (उनको इच्छानुसारको) मुख्य कुरो के हो भने हरेक व्यक्तिलाई त्यस्तै शिक्षा प्राप्त होस् जस्तो (शिक्षा) पहिला तिमीहरूलाई प्रदान गरिएको थियो । अन्यथा तिनीहरूलाई तिमीहरूका प्रतिपालकका सामुन्ने

तिमीहरूविरुद्ध तर्क गर्ने अधिकार प्राप्त हुनेछ ।" तिमी भन, "सम्पूर्ण कृपा अल्लाहको हातमा छ । उनले जसलाई इच्छा गर्छन् उसलाई त्यो प्रदान गर्छन् तथा अल्लाह परम दानशील सर्वज्ञ छन्* ।

يَّخْتَصُّ بِرَحْمَتِهٖ مَنْ يَّشَآءُ ؕ وَاللّٰهُ ذُو الْفَضْلِ الْعَظِيْمِ ﴿۷۴﴾

७५. उनी जसलाई इच्छा गर्छन् आफ्नो करुणाका निम्ति उसैलाई चुन्छन् तथा अल्लाह परम दानशील छन् ।"

وَمِنْ اَهْلِ الْكِتٰبِ مَنْ اِنْ تَاْمَنْهُ بِقِنْطَارٍ يُّؤَدِّهٖۤ اِلَيْكَ ۚ وَمِنْهُمْ مَّنْ اِنْ تَاْمَنْهُ بِدِيْنَارٍ لَّا يُؤَدِّهٖۤ اِلَيْكَ اِلَّا مَا دُمْتَ عَلَيْهِ قَآئِمًا ؕ ذٰلِكَ بِاَنَّهُمْ قَالُوْا لَيْسَ عَلَيْنَا فِى الْاُمِّيّٖنَ سَبِيْلٌ ۚ وَيَقُوْلُوْنَ عَلَى اللّٰهِ الْكَذِبَ وَهُمْ يَعْلَمُوْنَ ﴿۷۵﴾

७६. पुस्तकप्राप्त व्यक्तिहरूमध्ये यस्तो व्यक्ति
(पनि) छ जसलाई तिमीले प्रशस्त धन धरोहरस्वरूप दिए पनि उसले तिमीलाई त्यो फर्काउने छ, तथा तिनीहरूमध्ये यस्तो व्यक्ति (पनि) छ जसलाई तिमीले यदि एउटा दिनार धरोहरस्वरूप दियौ भने जबसम्म तिमी उसका सामु डटेर खडा रहँदैनौ उसले तिमीलाई त्यो फर्काउने छैन । यसको कारण के हो भने तिनीहरू भन्छन् "अज्ञानीहरूको सम्बन्धलाई लिएर हामीलाई कुनै आरोप लाग्नेछैन," तथा तिनीहरू जानीबुझीकन अल्लाहबारे मिथ्या कुराहरू गर्छन् ।

بَلٰى مَنْ اَوْفٰى بِعَهْدِهٖ وَاتَّقٰى فَاِنَّ اللّٰهَ يُحِبُّ الْمُتَّقِيْنَ ﴿۷۶﴾

७७. होइन, अपितु जुन व्यक्तिले आफ्नो प्रतिज्ञापूर्ण गर्छ तथा अल्लाहको डर धारण गर्छ– निश्चय नै, अल्लाह उनीसित डराउने व्यक्तिहरूलाई मन पराउँछन् ।

* टिप्पणी : यसले के संकेत दिन्छ भने पवित्र नबी (उनीप्रति अल्लाहको शान्ति र आशीर्वाद होस्) विरुद्ध तर्क गर्ने मुद्दा केवल यहुदीहरूकै थिएन किनभने उनलाई प्रदान गरिएका शिक्षाहरू पूर्णतया: उनीहरूकै (शिक्षा) अनुरूप थिएनन् । यस विपरित इस्लामधर्मी मानिसहरूलाई पुस्तकप्राप्त व्यक्तिहरूका पक्षमा अल्लाहको पक्षपातपूर्ण व्यवहार दर्शाउँदै अल्लाहको शिक्षाबाट पूर्णतया: वञ्चित गरिएको हुनाले तिनीहरूविरुद्ध तर्क गर्ने (उनीहरूलाई) अधिक अधिकार प्राप्त हुनेछ । जुन शिक्षाको भिन्नताविरुद्ध यहुदीहरू विरोध प्रदर्शन गर्थे त्यो त पूर्णतया: अप्रासङ्गिक कुरो हो ।

اِنَّ الَّذِيْنَ يَشْتَرُوْنَ بِعَهْدِ اللّٰهِ وَ اَيْمَانِهِمْ ثَمَنًا قَلِيْلًا اُولٰٓئِكَ لَا خَلَاقَ لَهُمْ فِي الْاٰخِرَةِ وَلَا يُكَلِّمُهُمُ اللّٰهُ وَلَا يَنْظُرُ اِلَيْهِمْ يَوْمَ الْقِيٰمَةِ وَلَا يُزَكِّيْهِمْ ۪ وَلَهُمْ عَذَابٌ اَلِيْمٌ ﴿٧٧﴾

७८. ती व्यक्तिहरू, जसले अल्लाहसँगको आफ्नो प्रतिज्ञा र शपथको सट्टामा तुच्छ मूल्य ग्रहण गर्छन्, तिनीहरूको परलोकमा कुनै अंश रहनेछैन । अल्लाहले पुरुत्थानका दिन न त तिनीहरूसँग वार्ता गर्नेछन् न तिनीहरूतर्फ हेर्नेछन्, न तिनीहरूलाई पवित्र नै बनाउने छन् । तथा तिनीहरूका निम्ति एउटा पीडादायक दण्ड रहनेछ ।

وَاِنَّ مِنْهُمْ لَفَرِيْقًا يَّلْوٗنَ اَلْسِنَتَهُمْ بِالْكِتٰبِ لِتَحْسَبُوْهُ مِنَ الْكِتٰبِ وَمَا هُوَ مِنَ الْكِتٰبِ ۚ وَيَقُوْلُوْنَ هُوَ مِنْ عِنْدِ اللّٰهِ وَمَا هُوَ مِنْ عِنْدِ اللّٰهِ ۚ وَيَقُوْلُوْنَ عَلَى اللّٰهِ الْكَذِبَ وَهُمْ يَعْلَمُوْنَ ﴿٧٨﴾

७९. तथा निश्चय नै, तिनीहरूमध्ये एउटा समूह यस्तो छ जसले पुस्तक पाठ गर्दा आफ्ना जिब्रालाई लटपटाउँछ । ताकि त्यसलाई तिमीहरू पुस्तकको (अंशको) रूपमा ठान जबकि त्यो पुस्तकको (अंश भने) हुँद होइन । तथा तिनीहरू भन्छन्, "यो अल्लाहका तर्फबाट हो," परन्तु वास्तवमा त्यो अल्लाहका तर्फबाट होइन, यसरी तिनीहरू जानीबुझी अल्लाहविरुद्ध मिथ्या कुरा बोल्छन् ।

مَا كَانَ لِبَشَرٍ اَنْ يُّؤْتِيَهُ اللّٰهُ الْكِتٰبَ وَالْحُكْمَ وَالنُّبُوَّةَ ثُمَّ يَقُوْلَ لِلنَّاسِ كُوْنُوْا عِبَادًا لِّيْ مِنْ دُوْنِ اللّٰهِ وَلٰكِنْ كُوْنُوْا رَبّٰنِيّٖنَ بِمَا كُنْتُمْ تُعَلِّمُوْنَ الْكِتٰبَ وَبِمَا كُنْتُمْ تَدْرُسُوْنَ ﴿٧٩﴾

८०. एउटा मानिसका निम्ति जसलाई अल्लाहले पुस्तक, तत्त्वज्ञान तथा नबुव्वत (भविष्यवाणी गर्ने ज्ञान) प्रदान गर्छन्, त्यसले मानिसहरूलाई "अल्लाहलाई छाडि तिमीहरू मेरा दास बन" भनी भन्नु (सम्भव) हुनेछैन, अपितु (उसले के भन्नेछ भने) – "तिमीहरू पुस्तकको ज्ञान दिन्छौ तथा (त्यसको) अध्ययन गर्छौ त्यसकारण तिमीहरू पूर्णरूपले अल्लाहप्रति समर्पित वन ।"

وَلَا يَاْمُرَكُمْ اَنْ تَتَّخِذُوا الْمَلٰٓئِكَةَ وَالنَّبِيّٖنَ اَرْبَابًا ۗ اَيَاْمُرُكُمْ بِالْكُفْرِ بَعْدَ اِذْ اَنْتُمْ مُّسْلِمُوْنَ ﴿٨٠﴾

८१. न त (उसका निम्ति) फरिस्ताहरू र नबीहरूलाई प्रतिपालकको रूपमा लिने गर भनी तिमीहरूलाई आदेश दिनु (नै सम्भव छ) । के तिमीहरू (अल्लाहप्रति) समर्पित भएपश्चात् उसले तिमीहरूलाई अविश्वास गर्ने आदेश दिन्छ र ?

وَإِذْ أَخَذَ اللَّهُ مِيثَاقَ النَّبِيِّينَ لَمَا آتَيْتُكُم مِّن كِتَابٍ وَحِكْمَةٍ ثُمَّ جَاءَكُمْ رَسُولٌ مُّصَدِّقٌ لِّمَا مَعَكُمْ لَتُؤْمِنُنَّ بِهِ وَلَتَنصُرُنَّهُ ۚ قَالَ أَأَقْرَرْتُمْ وَأَخَذْتُمْ عَلَىٰ ذَٰلِكُمْ إِصْرِي ۖ قَالُوا أَقْرَرْنَا ۚ قَالَ فَاشْهَدُوا وَأَنَا مَعَكُم مِّنَ الشَّاهِدِينَ ﴿٨١﴾

८२. अनि (त्यस समयको स्मरण गर) जब अल्लाहले (मानिसहरूसँग) नबीहरूमार्फत् (के भन्दै) अङ्गीकार लिएका थिए भने, "पुस्तक तथा ज्ञानबाट मैले तिमीहरूलाई जे प्रदान गरुँ (तथा) तिमीहरूसमक्ष जब एउटा यस्तो सन्देशवाहक आएमा जसले तिमीहरूसँग रहेको कुरालाई पूर्ण गर्नेछ (तब) तिमीहरूले अवश्य नै त्यसप्रति विश्वास गर्नु र उसलाई सहयोग गर्नु ।" (तथा) उनले भने, "के तिमीहरू सम्मत छौ, तथा (यस मामिलासम्बन्धी) जुन दायित्वभार मैले तिमीलाई अर्पण गरेको छु, त्यसलाई स्वीकार गर्छौ ?" उनीहरूले भने, "हामी सम्मत छौं," उनले भने, त्यसो भए तिमीहरू साक्षी बस, र म पनि तिमीहरूसँग एक साक्षीको रूपमा रहनेछु।"

فَمَن تَوَلَّىٰ بَعْدَ ذَٰلِكَ فَأُولَٰئِكَ هُمُ الْفَاسِقُونَ ﴿٨٢﴾

८३. अब जुन व्यक्ति यस (अङ्गीकार)पश्चात् विमुख हुन्छ, तब निश्चय नै यस्ता व्यक्तिहरू उल्लङ्घनकारी हुन् ।

أَفَغَيْرَ دِينِ اللَّهِ يَبْغُونَ وَلَهُ أَسْلَمَ مَن فِي السَّمَاوَاتِ وَالْأَرْضِ طَوْعًا وَكَرْهًا وَإِلَيْهِ يُرْجَعُونَ ﴿٨٣﴾

८४. के तिनीहरू अल्लाहको (धर्मलाई) छाडी अन्य कुनै धर्मको चाहना गर्छन् ? वस्तुतः आकाशमण्डलमा तथा यस पृथ्वीमा रहेका सम्पूर्ण वस्तु इच्छापूर्वक अथवा अनिच्छापूर्वक उनकै आज्ञापालन गर्छन्, तथा उनीतर्फनै तिनीहरूलाई फर्काइनेछ ?

قُلْ آمَنَّا بِاللَّهِ وَمَا أُنزِلَ عَلَيْنَا وَمَا أُنزِلَ عَلَىٰ إِبْرَاهِيمَ وَإِسْمَاعِيلَ وَإِسْحَاقَ وَيَعْقُوبَ وَالْأَسْبَاطِ وَمَا أُوتِيَ مُوسَىٰ وَعِيسَىٰ وَالنَّبِيُّونَ مِن رَّبِّهِمْ لَا نُفَرِّقُ بَيْنَ أَحَدٍ مِّنْهُمْ وَنَحْنُ لَهُ مُسْلِمُونَ ﴿٨٤﴾

८५. तिमी भन, "हामी अल्लाहप्रति तथा त्यसप्रति विश्वास गर्छौं जुन कुरा हामीहरूमाथि अवतीर्ण गरिएको छ तथा त्यसप्रति जुन कुरा इब्राहिम र इस्माइल तथा इस्हाक र याकूब तथा (विभिन्न) जातिहरूमाथि अवतीर्ण गरिएको थियो, तथा जुन कुरा मुसा तथा ईसालाई र

(अन्य) सम्पूर्ण नबीहरूलाई उनीहरूका प्रतिपालकका तर्फबाट प्रदान गरिएको थियो । हामी तिनीहरूमध्ये कसैमा भेदभाव राख्दैनौं, तथा हामी उनका आज्ञाकारी हौं ।"

وَمَن يَبْتَغِ غَيْرَ الْإِسْلَامِ دِينًا فَلَن يُقْبَلَ مِنْهُ وَهُوَ فِي الْآخِرَةِ مِنَ الْخَاسِرِينَ ﴿٨٥﴾

८६. तथा जसले इस्लामलाई छाडी अन्य कुनै धर्म (ग्रहण गर्न) चाहन्छ, उसबाट त्यो स्वीकार गरिनेछैन, तथा परलोकमा त्यो व्यक्ति घाटा खाने व्यक्तिहरूमध्येको हुनेछ ।

كَيْفَ يَهْدِي اللَّهُ قَوْمًا كَفَرُوا بَعْدَ إِيمَانِهِمْ وَشَهِدُوا أَنَّ الرَّسُولَ حَقٌّ وَجَاءَهُمُ الْبَيِّنَاتُ ۚ وَاللَّهُ لَا يَهْدِي الْقَوْمَ الظَّالِمِينَ ﴿٨٦﴾

८७. जुन व्यक्तिहरू विश्वास स्थापनापश्चात् अविश्वासी बने, तथा जसले यो सन्देशवाहक साँचो थियो भनी साक्षी दिइसकेका थिए तथा जससमक्ष स्पष्ट सबुतहरू आइसकेका थिए उनीहरूलाई अल्लाहले कसरी सन्मार्गप्रदर्शन गर्छन् र ? अल्लाहले अन्यायकारी व्यक्तिहरूलाई सन्मार्ग प्रदर्शन गर्दैनन् ।

أُولَٰئِكَ جَزَاؤُهُمْ أَنَّ عَلَيْهِمْ لَعْنَةَ اللَّهِ وَالْمَلَائِكَةِ وَالنَّاسِ أَجْمَعِينَ ﴿٨٧﴾

८८. यस्ता व्यक्तिहरूले पाउने प्रतिदान के हो भने अल्लाह, तथा फरिस्ताहरू र मानिसहरू सबैको अभिशाप तिनीहरूमाथि पर्नेछ ।

خَالِدِينَ فِيهَا لَا يُخَفَّفُ عَنْهُمُ الْعَذَابُ وَلَا هُمْ يُنظَرُونَ ﴿٨٨﴾

८९. तिनीहरू त्यहीं रहनेछन् न त तिनीहरूको दण्ड घटाइनेछ तथा न तिनीहरूलाई छुट दिइनेछ ।

إِلَّا الَّذِينَ تَابُوا مِن بَعْدِ ذَٰلِكَ وَأَصْلَحُوا فَإِنَّ اللَّهَ غَفُورٌ رَّحِيمٌ ﴿٨٩﴾

९०. केवल ती व्यक्तिहरूबाहेक जसले त्यसपश्चात् प्रायश्चित गर्छन् तथा सुधार गर्छन् तथा अल्लाह निश्चय नै परम क्षमाशील, करुणाशील छन् ।

إِنَّ الَّذِينَ كَفَرُوا بَعْدَ إِيمَانِهِمْ ثُمَّ ازْدَادُوا كُفْرًا لَّن تُقْبَلَ تَوْبَتُهُمْ وَأُولَٰئِكَ هُمُ الضَّالُّونَ ﴿٩٠﴾

९१. स्थापनापश्चात् अविश्वास गर्छन् तथा अविश्वासमा वृद्धि गर्छन् । तिनीहरूको प्रायश्चित स्वीकार गरिनेछैन, तथा

यिनीहरू नै पथभ्रष्ट हुन् ।

إِنَّ الَّذِينَ كَفَرُوا وَمَاتُوا وَهُمْ كُفَّارٌ فَلَن يُقْبَلَ مِنْ أَحَدِهِم مِّلْءُ الْأَرْضِ ذَهَبًا وَلَوِ افْتَدَىٰ بِهِ ۗ أُولَٰئِكَ لَهُمْ عَذَابٌ أَلِيمٌ وَمَا لَهُم مِّن نَّاصِرِينَ ﴿٩١﴾

९२. ती व्यक्तिहरू जसले अविश्वास गरेका छन् तथा अविश्वासी रहेका अवस्थामा नै तिनीहरूको मृत्यु भयो भने तिनीहरूमध्ये कसैले आफ्नो उद्धारका सट्टामा पृथ्वीभरिकै सुन टक्र्याए तापनि कदापि त्यसबाट (त्यो) ग्रहण गरिनेछैन । यिनीहरूनै ती व्यक्तिहरू हुन् जसका निम्ति पीडादायक दण्ड रहेको छ, तथा यिनीहरूको कुनै सहयोगी हुनेछैन ।

لَن تَنَالُوا الْبِرَّ حَتَّىٰ تُنفِقُوا مِمَّا تُحِبُّونَ ۚ وَمَا تُنفِقُوا مِن شَيْءٍ فَإِنَّ اللَّهَ بِهِ عَلِيمٌ ﴿٩٢﴾

९३. जबसम्म तिमीहरू आफ्ना प्रिय मानेका वस्तुहरूबाट खर्च गर्दैनौ तबसम्म कदापि तिमीहरूले पुण्य प्राप्त गर्न सक्दैनौ, तथा जे जस्ता वस्तुहरू तिमीहरू खर्च गर्छौ अल्लाहले निश्चय नै त्यसलाई राम्ररी जान्दछन् ।

كُلُّ الطَّعَامِ كَانَ حِلًّا لِّبَنِي إِسْرَائِيلَ إِلَّا مَا حَرَّمَ إِسْرَائِيلُ عَلَىٰ نَفْسِهِ مِن قَبْلِ أَن تُنَزَّلَ التَّوْرَاةُ ۗ قُلْ فَأْتُوا بِالتَّوْرَاةِ فَاتْلُوهَا إِن كُنتُمْ صَادِقِينَ ﴿٩٣﴾

९४. इजरायलका सन्तानका निम्ति तौरात अवतीर्ण गरिएअघि स्वयम् इजरायलले आफैंले अवैध घोषित गरेका वस्तुहरूबाहेक सम्पूर्ण खाद्यहरू वैध थिए । तिमी भन, "यदि तिमीहरू साँचा हौ भने तौरात ल्याएर त्यसलाई पढ ।"

فَمَنِ افْتَرَىٰ عَلَى اللَّهِ الْكَذِبَ مِن بَعْدِ ذَٰلِكَ فَأُولَٰئِكَ هُمُ الظَّالِمُونَ ﴿٩٤﴾

९५. अब जसले यसपछि अल्लाहप्रति मिथ्याभियोग लगाउँछन्, तिनीहरू नै अन्यायकारी हुनेछन् ।

قُلْ صَدَقَ اللَّهُ ۗ فَاتَّبِعُوا مِلَّةَ إِبْرَاهِيمَ حَنِيفًا وَمَا كَانَ مِنَ الْمُشْرِكِينَ ﴿٩٥﴾

९६. तिमी भन, "अल्लाहले सत्यप्रकट गरेका छन् । त्यसकारण (अल्लाहका) एकनिष्ठ इब्राहिमको धर्मको अनुसरण गर तथा उनी अनेकाश्वरवादीहरू मध्ये थिएनन् ।

९७. निश्चय नै, मानवजातिका निम्ति निर्माण गरिएको पहिलो घर बक्कामा* अवस्थित छ, त्यो सर्वमङ्गलमय तथा सम्पूर्ण मानिसहरूका निम्ति मार्गदर्शनस्वरूप छ ।

إِنَّ أَوَّلَ بَيْتٍ وُضِعَ لِلنَّاسِ لَلَّذِي بِبَكَّةَ مُبَارَكًا وَهُدًى لِّلْعَالَمِينَ ﴿٩٦﴾

९८. यसभित्र स्पष्ट चिह्नहरू छन्, यो इब्राहिमको स्थान हो, तथा जुन व्यक्ति यसभित्र प्रवेश गर्छ त्यसले शान्ति प्राप्त गर्छ । तथा ती व्यक्तिहरू जसमा त्यहाँसम्म पुग्ने सामर्थ्य छ तिनीहरूप्रति अल्लाहका निम्ति त्यस घरको तीर्थयात्रा गर्नु कर्तव्य रहेको छ । तथा जसले अविश्वास गर्छ (उसले के स्मरण राखोस् भने) अल्लाह निश्चय नै सम्पूर्ण सृष्टिबाट स्वतन्त्र छन् ।

فِيهِ آيَاتٌ بَيِّنَاتٌ مَّقَامُ إِبْرَاهِيمَ ۖ وَمَن دَخَلَهُ كَانَ آمِنًا ۗ وَلِلَّهِ عَلَى النَّاسِ حِجُّ الْبَيْتِ مَنِ اسْتَطَاعَ إِلَيْهِ سَبِيلًا ۚ وَمَن كَفَرَ فَإِنَّ اللَّهَ غَنِيٌّ عَنِ الْعَالَمِينَ ﴿٩٧﴾

९९. तिमी भन, "हे पुस्तकप्राप्त मानिसहरू हो ! अल्लाहका चिह्नहरूको तिमीहरू किन इन्कार (अस्वीकार) गर्छौ, वस्तुत: अल्लाहले तिमीहरूका कार्यहरूलाई देखि रहेछन् ।"

قُلْ يَا أَهْلَ الْكِتَابِ لِمَ تَكْفُرُونَ بِآيَاتِ اللَّهِ وَاللَّهُ شَهِيدٌ عَلَىٰ مَا تَعْمَلُونَ ﴿٩٨﴾

१००. तिमी भन, "हे पुस्तकप्राप्त मानिसहरू हो ! जब तिमीहरू नै (त्यसका) साक्षी छौ भने त्यसलाई कुटिल पार्ने इच्छाले अल्लाहका मार्गबाट विश्वासीजनहरूलाई किन रोक्छौ? तथा जुन कार्य तिमीहरू गर्छौ त्यसबाट अल्लाह अविदित छैनन् ।

قُلْ يَا أَهْلَ الْكِتَابِ لِمَ تَصُدُّونَ عَن سَبِيلِ اللَّهِ مَنْ آمَنَ تَبْغُونَهَا عِوَجًا وَأَنتُمْ شُهَدَاءُ ۗ وَمَا اللَّهُ بِغَافِلٍ عَمَّا تَعْمَلُونَ ﴿٩٩﴾

१०१ हे विश्वासीजन हो ! यदि तिमीहरूले ती पुस्तक प्रदान गरिएका व्यक्तिहरूमध्ये कुनै समुहको अनुसरण गर्‍यौ भने तिनीहरूले तिमीहरूलाई तिमीहरू विश्वासी भएपश्चात् पुन:

يَا أَيُّهَا الَّذِينَ آمَنُوا إِن تُطِيعُوا فَرِيقًا مِّنَ الَّذِينَ أُوتُوا الْكِتَابَ يَرُدُّوكُم بَعْدَ إِيمَانِكُمْ كَافِرِينَ ﴿١٠٠﴾

* मक्काको उपत्यका ।

अविश्वासी बनाउने छन् ।

१०२. तिमीहरू कसरी पो अविश्वासी हुनसक्छौ जब तिमीहरूलाई नै अल्लाहका चिह्नहरू पढेर सुनाइन्छ, तथा तिमीहरूमध्येमा नै उनका सन्देशवाहक मौजूद छन् तथा जसले अल्लाहलाई दृढपूर्वक समात्छ निश्चय नै त्यसलाई सन्मार्ग प्रदर्शन गरिन्छ ।

وَكَيْفَ تَكْفُرُوْنَ وَاَنْتُمْ تُتْلٰى عَلَيْكُمْ اٰيٰتُ اللّٰهِ وَفِيْكُمْ رَسُوْلُهٗ ؕ وَمَنْ يَّعْتَصِمْ بِاللّٰهِ فَقَدْ هُدِيَ اِلٰى صِرَاطٍ مُّسْتَقِيْمٍ ﴿١٠٢﴾

१०३. हे विश्वासीजन हो ! जसरी अल्लाहको डर राख्नु उचित हुनेछ त्यसरी नै उनको डर धारण गर, तथा तिमीहरूको मृत्यु कदापि नहोस् परन्तु पूर्ण आज्ञाकारी रहेका अवस्थामा

يٰۤاَيُّهَا الَّذِيْنَ اٰمَنُوا اتَّقُوا اللّٰهَ حَقَّ تُقٰتِهٖ وَلَا تَمُوْتُنَّ اِلَّا وَاَنْتُمْ مُّسْلِمُوْنَ ﴿١٠٣﴾

१०४. र सबै मिलेर अल्लाहको डोरीलाई दृढतापूर्वक पक र विभाजित नहोऊ, तथा अल्लाहको त्यस अनुकम्पाको स्मरण गर जुन उनले तिमीहरूमाथि, तिमीहरू शत्रु भएका समयमा प्रदर्शित गरेका थिए । तथा उनले तिमीहरूका हृदयलाई प्रेमले गाँसे जसबाट तिमीहरू उनको कृपाले परस्पर भाइ भाइ (सदृश्य) बन्न पुग्यौ, तथा तिमीहरू अग्निकुण्डको तीरमा थियौ तथा उनले तिमीहरूलाई त्यबसाट बचाए । यसैप्रकार अल्लाह तिमीहरूका निम्ति आफ्ना चिह्नहरूको वर्णन गर्छन् ताकि तिमीहरूलाई मार्गदर्शन प्राप्त होस् ।

وَاعْتَصِمُوْا بِحَبْلِ اللّٰهِ جَمِيْعًا وَّلَا تَفَرَّقُوْا ۪ وَاذْكُرُوْا نِعْمَتَ اللّٰهِ عَلَيْكُمْ اِذْ كُنْتُمْ اَعْدَآءً فَاَلَّفَ بَيْنَ قُلُوْبِكُمْ فَاَصْبَحْتُمْ بِنِعْمَتِهٖۤ اِخْوَانًا ۚ وَكُنْتُمْ عَلٰى شَفَا حُفْرَةٍ مِّنَ النَّارِ فَاَنْقَذَكُمْ مِّنْهَا ؕ كَذٰلِكَ يُبَيِّنُ اللّٰهُ لَكُمْ اٰيٰتِهٖ لَعَلَّكُمْ تَهْتَدُوْنَ ﴿١٠٤﴾

१०५. तथा तिमीहरूमध्ये एउटा त्यस्ता व्यक्तिहरूको जमात होस् जसको काम पुण्यतर्फ बोलाउनु र न्यायमा आधारित कुराहरूको आदेश दिनु तथा दुष्कर्मबाट रोक्नु रहोस् । तथा तिनै व्यक्तिहरू कृतार्थ हुनेछन् ।

وَلْتَكُنْ مِّنْكُمْ اُمَّةٌ يَّدْعُوْنَ اِلَى الْخَيْرِ وَيَاْمُرُوْنَ بِالْمَعْرُوْفِ وَيَنْهَوْنَ عَنِ الْمُنْكَرِ ؕ وَاُولٰٓئِكَ هُمُ الْمُفْلِحُوْنَ ﴿١٠٥﴾

وَلَا تَكُونُوا كَالَّذِينَ تَفَرَّقُوا وَاخْتَلَفُوا مِنْ بَعْدِ مَا جَاءَهُمُ الْبَيِّنٰتُ ۚ وَأُولٰٓئِكَ لَهُمْ عَذَابٌ عَظِيمٌ ﴿١٠٥﴾

१०६. तथा तिमीहरू ती व्यक्तिहरूभैँ नबन जुन व्यक्तिहरू स्पष्ट प्रमाणहरूको आगमनपश्चात् विभाजित हुन पुगे तथा जसले (परस्पर) मतभेद उत्पन्न गरे । तथा यिनै व्यक्तिहरूका निम्ति एउटा ठूलो दण्ड निर्धारित छ ।

يَوْمَ تَبْيَضُّ وُجُوهٌ وَتَسْوَدُّ وُجُوهٌ ۚ فَأَمَّا الَّذِينَ اسْوَدَّتْ وُجُوهُهُمْ أَكَفَرْتُمْ بَعْدَ إِيمَانِكُمْ فَذُوقُوا الْعَذَابَ بِمَا كُنْتُمْ تَكْفُرُونَ ﴿١٠٦﴾

१०७. त्यसदिन जब केही मुहारहरू श्वेत हुनेछन् तथा केही मुहारहरू काला हुनेछन् । अत: जसका मुहारहरू काला हुनेछन् (तिनीहरूलाई के भनिने छ भने), "के तिमीहरू विश्वास स्थापनापश्चात् अविश्वासी भएका थियौ ? त्यसो भए आफ्नो अविश्वासको कारण यस दण्डलाई चाख ।"

وَأَمَّا الَّذِينَ ابْيَضَّتْ وُجُوهُهُمْ فَفِي رَحْمَةِ اللّٰهِ ۖ هُمْ فِيهَا خٰلِدُونَ ﴿١٠٧﴾

१०८. तथा जुन व्यक्तिहरूका मुहार श्वेत हुनेछन्, तिनीहरू अल्लाहको करुणान्तर्गत हुनेछन्, तिनीहरू त्यहीँ रहिरहनेछन् ।

تِلْكَ آيٰتُ اللّٰهِ نَتْلُوهَا عَلَيْكَ بِالْحَقِّ ۗ وَمَا اللّٰهُ يُرِيدُ ظُلْمًا لِلْعٰلَمِينَ ﴿١٠٨﴾

१०९. यी सत्यमा आधारित अल्लाहका चिह्नहरू हुन् जसलाई हामी तिम्रासामु पाठ गरेर सुनाउँछौं, तथा अल्लाह (आफ्ना) सृष्टिहरूप्रति कुनै प्रकारको अन्याय गर्न रुचाउँदैनन् ।

وَلِلّٰهِ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْأَرْضِ ۚ وَإِلَى اللّٰهِ تُرْجَعُ الْأُمُورُ ﴿١٠٩﴾

११०. तथा आकाशमण्डलमा रहेका र पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरू अल्लाहकै हुन्, तथा सम्पूर्ण मामिलाहरू (निर्णयका निम्ति) अल्लाहतर्फ नै फर्काइनेछ ।

كُنْتُمْ خَيْرَ أُمَّةٍ أُخْرِجَتْ لِلنَّاسِ تَأْمُرُونَ بِالْمَعْرُوفِ وَتَنْهَوْنَ عَنِ الْمُنْكَرِ وَتُؤْمِنُونَ بِاللّٰهِ ۗ وَلَوْ آمَنَ أَهْلُ الْكِتٰبِ لَكَانَ خَيْرًا لَهُمْ ۚ مِنْهُمُ الْمُؤْمِنُونَ وَأَكْثَرُهُمُ الْفٰسِقُونَ ﴿١١٠﴾

१११. तिमीहरू मानिसहरूको भलाईका निम्ति सृष्टि गरिएका उत्तम जमात हौ । तिमीहरू पुण्यकार्यको उपदेश दिन्छौ र दुष्कार्यलाई रोक्छौ तथा अल्लाहप्रति विश्वास राख्छौ । तथा यदि पुस्तकप्राप्त व्यक्तिहरूले विश्वास स्थापना गरेका भए निश्चय नै तिनीहरूका निम्ति भलो हुने

थियो । तिनीहरूमध्ये केही विश्वासी छन् तर अधिकतर चाहिँ अवज्ञाकारी छन् ।

لَنْ يَّضُرُّوْكُمْ اِلَّآ اَذًى ۚ وَ اِنْ يُّقَاتِلُوْكُمْ يُوَلُّوْكُمُ الْاَدْبَارَ ثُمَّ لَا يُنْصَرُوْنَ ﴿١١٢﴾

११२. साधारण चोट पुऱ्याउनुबाहेक तिनीहरूले तिमीहरूको कुनै हानी गर्न सक्दैनन्, तथा यदि तिनीहरूले तिमीहरूसँग लडाई गरे भने तिमीहरूतर्फ आफ्नो पिठ्यूँ फर्काउने छन् । तब तिनीहरूलाई मद्दत प्राप्त हुनेछैन ।

ضُرِبَتْ عَلَيْهِمُ الذِّلَّةُ اَيْنَ مَا ثُقِفُوْٓا اِلَّا بِحَبْلٍ مِّنَ اللّٰهِ وَحَبْلٍ مِّنَ النَّاسِ وَ بَآءُوْ بِغَضَبٍ مِّنَ اللّٰهِ وَضُرِبَتْ عَلَيْهِمُ الْمَسْكَنَةُ ۚ ذٰلِكَ بِاَنَّهُمْ كَانُوْا يَكْفُرُوْنَ بِاٰيٰتِ اللّٰهِ وَ يَقْتُلُوْنَ الْاَنْۢبِيَآءَ بِغَيْرِ حَقٍّ ۚ ذٰلِكَ بِمَا عَصَوْا وَّكَانُوْا يَعْتَدُوْنَ ﴿١١٣﴾

११३. जबसम्म तिनीहरू अल्लाहका शरणमा अथवा मानिसहरूका शरणमा आउँदैनन्, तबसम्म जहाँ तिनीहरू पाइनेछन् तिनीहरूमाथि लाञ्छनाको मार पर्नेछ । तिनीहरू अल्लाहको कोपभाजन बनेका छन्, तथा तिनीहरूमाथि तुच्छताको मार परेको छ । यसको कारण के हो भने तिनीहरू अल्लाहका चिह्नहरूलाई अस्वीकार गर्ने गर्थे तथा नबीहरूलाई अन्यायपूर्वक हत्या गर्ने गर्थे । तिनीहरू विद्रोह र सिमोल्लङ्घन गर्ने गर्थे त्यसैले त्यो -अवस्था) भएको हो ।

لَيْسُوْا سَوَآءً ۚ مِنْ اَهْلِ الْكِتٰبِ اُمَّةٌ قَآئِمَةٌ يَّتْلُوْنَ اٰيٰتِ اللّٰهِ اٰنَآءَ الَّيْلِ وَ هُمْ يَسْجُدُوْنَ ﴿١١٣﴾

११४. तिनीहरू (सबै) एकनासका छैनन् । पुस्तकप्राप्त मानिसहरूमध्ये एउटा यस्तो समुह पनि छ जो (आफ्नो अङ्गीकारप्रति) दृढतापूर्वक कायम रहन्छ, तिनीहरू रात्रिपख अल्लाहको वाणी पढ्छन् तथा (उनका सामु) दण्डवत् गर्छन् ।

يُؤْمِنُوْنَ بِاللّٰهِ وَ الْيَوْمِ الْاٰخِرِ وَ يَاْمُرُوْنَ بِالْمَعْرُوْفِ وَ يَنْهَوْنَ عَنِ الْمُنْكَرِ وَ يُسَارِعُوْنَ فِي الْخَيْرٰتِ ۚ وَ اُولٰٓئِكَ مِنَ الصّٰلِحِيْنَ ﴿١١٤﴾

११५. तिनीहरू अल्लाहप्रति तथा अन्तिमदिनप्रति विश्वास गर्छन्, तथा पुण्यकार्यको उपदेश दिन्छन् र दुष्कार्यबाट रोक्छन् तथा पुण्यकार्य गर्नमा एक अर्कासित प्रतिस्पर्धा चाँडो गर्छन् । तथा यिनीहरू धर्मपरायण व्यक्तिहरूमध्येका हुन्।

وَمَا يَفْعَلُوْا مِنْ خَيْرٍ فَلَنْ يُّكْفَرُوْهُ ؕ وَاللّٰهُ عَلِيْمٌۢ بِالْمُتَّقِيْنَ ﴿١١٥﴾

११६. तथा जुन पुण्यकार्य तिनीहरू गर्छन् त्यसको निर्धारित प्रतिफलबाट तिनीहरूलाई बञ्चित गरिनेछैन, तथा अल्लाहले उनीसित डराउने व्यक्तिहरूलाई राम्ररी जान्दछन् ।

اِنَّ الَّذِيْنَ كَفَرُوْا لَنْ تُغْنِيَ عَنْهُمْ اَمْوَالُهُمْ وَلَاۤ اَوْلَادُهُمْ مِّنَ اللّٰهِ شَيْـًٔا ؕ وَاُولٰٓئِكَ اَصْحٰبُ النَّارِ ۚ هُمْ فِيْهَا خٰلِدُوْنَ ﴿١١٦﴾

११७. ती व्यक्तिहरू जसले अविश्वास गर्छन्, तिनीहरूलाई अल्लाहविरुद्ध तिनीहरूका सम्पत्ति र सन्तानहरूले कुनै प्रकारको) लाभ पुऱ्याउन सक्नेछैनन्, तथा यिनीहरू अग्निका निवासी हुन्, त्यहाँ नै यिनीहरू रहनेछन् ।

مَثَلُ مَا يُنْفِقُوْنَ فِيْ هٰذِهِ الْحَيٰوةِ الدُّنْيَا كَمَثَلِ رِيْحٍ فِيْهَا صِرٌّ اَصَابَتْ حَرْثَ قَوْمٍ ظَلَمُوْۤا اَنْفُسَهُمْ فَاَهْلَكَتْهُ ؕ وَمَا ظَلَمَهُمُ اللّٰهُ وَلٰكِنْ اَنْفُسَهُمْ يَظْلِمُوْنَ ﴿١١٧﴾

११८. यस वर्तमान जीवनका निम्ति तिनीहरूले खर्च गर्ने वस्तुहरूको अवस्था त्यस बतासको अवस्थासदृश छ जसमा अत्यन्तै चिसोपना छ र त्यो यस्ता मानिसहरूको खेतीमा चलेर त्यसलाई नष्ट पार्छ, जसले स्वयम्माथि अन्याय गरेको होस् । तथा अल्लाहले तिनीहरूमाथि अन्याय गरेनन्, परन्तु तिनीहरू स्वयम्ले आफूमाथि अन्याय गर्छन् ।

يٰۤاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا لَا تَتَّخِذُوْا بِطَانَةً مِّنْ دُوْنِكُمْ لَا يَاْلُوْنَكُمْ خَبَالًا ؕ وَدُّوْا مَا عَنِتُّمْ ۚ قَدْ بَدَتِ الْبَغْضَآءُ مِنْ اَفْوَاهِهِمْ ۖۚ وَمَا تُخْفِيْ صُدُوْرُهُمْ اَكْبَرُ ؕ قَدْ بَيَّنَّا لَكُمُ الْاٰيٰتِ اِنْ كُنْتُمْ تَعْقِلُوْنَ ﴿١١٨﴾

११९. हे विश्वासीजन हो ! आफ्ना मानिसहरूलाई छाडी (अन्य व्यक्तिहरूलाई) अन्तरङ्ग मित्र नबनाऊ । तिनीहरू तिमीहरूलाई भ्रष्ट पार्ने कर्म गर्नमा चुक्नेछैनन् । तिनीहरू तिमीहरूलाई सङ्कटग्रस्त देख्न चाहन्छन् । तिनीहरूका मुखको (उच्चारणबाट) पहिला नै घृणा प्रकट भइसकेको छ, तथा जुन कुरा तिनीहरूका मुटुमा लुकेको छ त्यो योभन्दा ठूलो छ । यदि तिमीहरूले बुझ्न सक्यौ भने हामीले तिमीहरूका निम्ति आफ्ना चिह्नहरू स्पष्ट रूपमा वर्णन गरिदिएका छौं ।

هٰۤاَنْتُمْ اُولَآءِ تُحِبُّوْنَهُمْ وَلَا يُحِبُّوْنَكُمْ

१२०. हेर, तिमीहरू ती (व्यक्ति)हरू हौ जसले उनीहरूसँग प्रेम गर्छौ परन्तु

وَتُؤْمِنُونَ بِالْكِتٰبِ كُلِّهٖ ۚ وَإِذَا لَقُوكُمْ قَالُوٓا اٰمَنَّا ۚۖ وَإِذَا خَلَوْا عَضُّوا عَلَيْكُمُ الْاَنَامِلَ مِنَ الْغَيْظِ ۚ قُلْ مُوتُوا بِغَيْظِكُمْ ۚ اِنَّ اللّٰهَ عَلِيْمٌ ۢ بِذَاتِ الصُّدُوْرِ ﴿١٢٠﴾

तिनीहरू तिमीहरूसँग प्रेम गर्दैनन् ।तथा तिमीहरू सम्पूर्ण पुस्तकप्रति विश्वास गर्छौ । जब तिनीहरूले तिमीहरूलाई भेट्छन् (तब) तिनीहरू भन्छन्, "हामी विश्वास गर्छौं", परन्तु जब तिनीहरू अलग्गिन्छन्, (तब) तिमीहरूप्रतिको क्रोधले आफ्ना औंलाका टुप्पाहरू टोक्छन् । तिमी भन, "तिमीहरू आफ्ना कोधले नाश होऊ । निश्चय नै अल्लाहलाई (तिमीहरूका) मुटुमा गुप्त रहेको कुराबारे राम्ररी थाहा छ

اِنْ تَمْسَسْكُمْ حَسَنَةٌ تَسُؤْهُمْ ۖ وَاِنْ تُصِبْكُمْ سَيِّئَةٌ يَّفْرَحُوْا بِهَا ۖ وَاِنْ تَصْبِرُوْا وَتَتَّقُوْا لَا يَضُرُّكُمْ كَيْدُهُمْ شَيْـًٔا ۗ اِنَّ اللّٰهَ بِمَا يَعْمَلُوْنَ مُحِيْطٌ ﴿١٢١﴾

१२१. यदि कुनै मङ्गल तिमीहरूसमक्ष प्रकट भएमा तिनीहरूलाई नराम्रो लाग्छ, तथा यदि तिमीहरूमाथि कुनै सङ्कट आइपरेमा, त्यसबाट तिनीहरू आनन्दित हुन्छन् । परन्तु यदि तिमीहरूले धैर्यधारण गर्‍यौ र धर्मनिष्ठ रह्यौ भने, तिनीहरूको चालबाजीले तिमीहरूको कुनै हानी हुनेछैन । वास्तवमा तिनीहरूका (सबै) कार्यहरूलाई अल्लाहले (पूर्णरूपमा) घेर्छन्।

وَاِذْ غَدَوْتَ مِنْ اَهْلِكَ تُبَوِّئُ الْمُؤْمِنِيْنَ مَقَاعِدَ لِلْقِتَالِ ۗ وَاللّٰهُ سَمِيْعٌ عَلِيْمٌ ﴿١٢٢﴾

१२२. तथा -त्यस समयको स्मरण गर) जब तिमी बिहानै आफ्ना घर परिवारबाट निस्केर विश्वासीहरूलाई लडाईंका निम्ति तिनीहरूका निर्धारित स्थानमा तैनाथ गर्नलाई भनी गएका थियौ । तथा अल्लाह सर्वस्रोता, सर्वज्ञ छन् ।

اِذْ هَمَّتْ طَّآئِفَتٰنِ مِنْكُمْ اَنْ تَفْشَلَا ۙ وَاللّٰهُ وَلِيُّهُمَا ۗ وَعَلَى اللّٰهِ فَلْيَتَوَكَّلِ الْمُؤْمِنُوْنَ ﴿١٢٣﴾

१२३. जब तिमीहरूमध्ये दुइटा दलले कायरता देखाउन लागेका थिए वस्तुतः यद्यपि अल्लाह तिनीहरूका मित्र थिए । तथा विश्वासीजनले त अल्लाहप्रति नै भरोसा राख्नु उचित हुन्छ ।

وَلَقَدْ نَصَرَكُمُ اللّٰهُ بِبَدْرٍ وَّاَنْتُمْ اَذِلَّةٌ ۚ فَاتَّقُوا اللّٰهَ لَعَلَّكُمْ تَشْكُرُوْنَ ﴿١٢٤﴾

१२४. तथा -यसअघि) बदर्मा जब तिमीहरू दुर्बल थियौ अल्लाहले तिमीहरूलाई मद्दत गरिसकेका छन् । अतः अल्लाहलाई आफ्ना रक्षक बनाऊ – ताकि

तिमीहरू कृतज्ञ बन्न सक ।

१२५. तिमी विश्वासीहरूलाई भन्दै थियौ– "के तिमीहरूका प्रतिपालकले (स्वर्गबाट) अवतरित तीन हजार फरिस्ताहरूद्वारा तिमीहरूको मद्दत गर्नु तिमीहरूका निम्ति पर्याप्त हुँदैन र ?"

إِذْ تَقُولُ لِلْمُؤْمِنِينَ أَلَنْ يَكْفِيَكُمْ أَنْ يُمِدَّكُمْ رَبُّكُمْ بِثَلَاثَةِ آلَافٍ مِنَ الْمَلَائِكَةِ مُنْزَلِينَ ۝١٢٤

१२६. किन नहोस् ! तिमीहरूले धैर्य गऱ्यौ र सत्यशील बन्यौ भने तिनीहरूले तत्काल तिमीहरूमाथि चढाइ गरेका खण्डमा, तिमीहरूका प्रतिपालकले घोर आक्रमणकारी पाँच हजार फरिस्ताहरूद्वारा तिमीहरूको मद्दत गर्नेछन् ।

بَلَىٰ ۚ إِنْ تَصْبِرُوا وَتَتَّقُوا وَيَأْتُوكُمْ مِنْ فَوْرِهِمْ هَٰذَا يُمْدِدْكُمْ رَبُّكُمْ بِخَمْسَةِ آلَافٍ مِنَ الْمَلَائِكَةِ مُسَوِّمِينَ ۝١٢٥

१२७. अल्लाहले यो कुरो तिमीहरूका निम्ति केवल शुभसन्देशस्वरूप तथा यसद्वारा तिमीहरूका हृदयलाई शान्तिप्राप्त होस् भनी निर्धारण गरेका हुन्, तथा मद्दत ता केवल सर्वशक्तिमान, तत्त्वज्ञ अल्लाहका तर्फबाट नै आउँछ ।

وَمَا جَعَلَهُ اللَّهُ إِلَّا بُشْرَىٰ لَكُمْ وَلِتَطْمَئِنَّ قُلُوبُكُمْ بِهِ ۗ وَمَا النَّصْرُ إِلَّا مِنْ عِنْدِ اللَّهِ الْعَزِيزِ الْحَكِيمِ ۝١٢٦

१२८. (अल्लाहले त्यसै गर्नेछन्), जसद्वारा अविश्वासीहरूमध्ये एक समूहलाई उनले ध्वंस गरून् अथवा तिनीहरूलाई अपमानित गरून् ताकि तिनीहरू निराश भई फर्किउन् ।

لِيَقْطَعَ طَرَفًا مِنَ الَّذِينَ كَفَرُوا أَوْ يَكْبِتَهُمْ فَيَنْقَلِبُوا خَائِبِينَ ۝١٢٧

१२९. यस मामिलासँग तिम्रो कुनै सरोकार छैन, चाहे उनले तिनीहरूमाथि कृपा गरून् चाहे तिनीहरूलाई दण्ड दिउन् कारण तिनीहरू अन्यायकारी हुन् ।

لَيْسَ لَكَ مِنَ الْأَمْرِ شَيْءٌ أَوْ يَتُوبَ عَلَيْهِمْ أَوْ يُعَذِّبَهُمْ فَإِنَّهُمْ ظَالِمُونَ ۝١٢٨

१३०. तथा आकाशमण्डल तथा पृथ्वीमा जे छ सम्पूर्ण वस्तुहरू अल्लाहकै हुन् । उनले जसलाई इच्छा गर्छन्, क्षमा प्रदान गर्छन् तथा जसलाई चाहन्छन् दण्ड दिन्छन्, तथा अल्लाह परम क्षमाशील,

وَلِلَّهِ مَا فِي السَّمَاوَاتِ وَمَا فِي الْأَرْضِ ۚ يَغْفِرُ لِمَنْ يَشَاءُ وَيُعَذِّبُ مَنْ يَشَاءُ ۚ وَاللَّهُ غَفُورٌ رَحِيمٌ ۝١٢٩

परम दयाशील छन्।

१३१. हे विश्वासीजन हो ! तिमीहरू अनेक गुणा बढाएर ब्याज खाने नगर, तथा अल्लाहको डर लेऊ ताकि तिमीहरू कृतार्थ हुन सक ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا لَا تَاْكُلُوا الرِّبٰوٓا اَضْعَافًا مُّضٰعَفَةً ۠ وَّاتَّقُوا اللّٰهَ لَعَلَّكُمْ تُفْلِحُوْنَ ﴿١٣٠﴾

१३२. तथा त्यस अग्निको डर राख जुन अविश्वासीहरूका निम्ति तयार गरिएको छ

وَاتَّقُوا النَّارَ الَّتِيْٓ اُعِدَّتْ لِلْكٰفِرِيْنَ ﴿١٣١﴾

१३३. तथा अल्लाह र सन्देशवाहकको आज्ञापालन गर ताकि तिमीहरूमाथि करुणा गरियोस् ।

وَاَطِيْعُوا اللّٰهَ وَالرَّسُوْلَ لَعَلَّكُمْ تُرْحَمُوْنَ ﴿١٣٢﴾

१३४. तथा आफ्ना प्रतिपालकको क्षमायाचनाका निम्ति र त्यस स्वर्गका निम्ति परस्पर होडबाजी गर्दै अघि बढ जसको मूल्य आकाशमण्डल र पृथ्वी हुन्, जुन अल्लाहप्रति डराऊने व्यक्तिहरूका निम्ति तयार गरिएको छ ।

وَسَارِعُوْٓا اِلٰى مَغْفِرَةٍ مِّنْ رَّبِّكُمْ وَجَنَّةٍ عَرْضُهَا السَّمٰوٰتُ وَالْاَرْضُ ۙ اُعِدَّتْ لِلْمُتَّقِيْنَ ﴿١٣٣﴾

१३५. ती व्यक्तिहरू जसले सुखमा र दुखःमा खर्च गर्छन्, तथा जसले कोध दमन गर्छन् र मानिसहरूप्रति क्षमा प्रदर्शन गर्छन्, तथा अल्लाहले सत्कर्मीहरूलाई नै मन पराउँछन् ।

الَّذِيْنَ يُنْفِقُوْنَ فِي السَّرَّآءِ وَالضَّرَّآءِ وَالْكٰظِمِيْنَ الْغَيْظَ وَالْعَافِيْنَ عَنِ النَّاسِ ۭ وَاللّٰهُ يُحِبُّ الْمُحْسِنِيْنَ ﴿١٣٤﴾

१३६. तथा ती व्यक्तिहरू जसले जब कुनै अनुचित कार्य गर्छन्, अथवा स्वयम्प्रति अन्याय गर्छन्, तब अल्लाहलाई स्मरण गर्छन् र आफ्नो पापप्रति क्षमायाचना गर्छन् तथा अल्लाहबाहेक अरू कसले पाप माफ गर्नसक्छ र ? तथा तिनीहरू आफूले गरेका कार्यहरूप्रति जानीबुझीकन हठ गर्दैनन् ।

وَالَّذِيْنَ اِذَا فَعَلُوْا فَاحِشَةً اَوْ ظَلَمُوْٓا اَنْفُسَهُمْ ذَكَرُوا اللّٰهَ فَاسْتَغْفَرُوْا لِذُنُوْبِهِمْ ۠ وَمَنْ يَّغْفِرُ الذُّنُوْبَ اِلَّا اللّٰهُ ڞ وَلَمْ يُصِرُّوْا عَلٰى مَا فَعَلُوْا وَهُمْ يَعْلَمُوْنَ ﴿١٣٥﴾

१३७. ती उनीहरू नै हुन् जसको प्रतिदान तिनीहरूका प्रतिपालकका तर्फबाट क्षमादान तथा यस्ता बगैंचाहरू

اُولٰۗىِٕكَ جَزَاۗؤُهُمْ مَّغْفِرَةٌ مِّنْ رَّبِّهِمْ وَجَنّٰتٌ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ

خٰلِدِيْنَ فِيْهَا ۚ وَنِعْمَ اَجْرُ الْعٰمِلِيْنَ ﴿١٣٧﴾

हुनेछन् जसमनि नदीहरू बगिरहेका हुनेछन् जसमा तिनीहरू सदा बसोबास गर्नेछन्, तथा कर्म गर्ने व्यक्तिहरूको परितोषिक कति राम्रो छ !

قَدْ خَلَتْ مِنْ قَبْلِكُمْ سُنَنٌ ۙ فَسِيْرُوْا فِى الْاَرْضِ فَانْظُرُوْا كَيْفَ كَانَ عَاقِبَةُ الْمُكَذِّبِيْنَ ﴿١٣٨﴾

१३८. निश्चय नै, तिमीहरूभन्दा अघि कतिपय) कार्यपद्धतिहरू सम्पन्न भइसकेका छन्; त्यसकारण पृथ्वीमा डुलेर हेर, नबीहरूप्रति) झुट्टा व्यक्तिहरूसरह व्यवहार गर्ने व्यक्तिहरूको अन्त कस्तो (नराम्रो) भएको थियो ।

هٰذَا بَيَانٌ لِّلنَّاسِ وَهُدًى وَّمَوْعِظَةٌ لِّلْمُتَّقِيْنَ ﴿١٣٩﴾

१३९. यो (कुरान) मानिसहरूका निम्ति स्पष्ट वर्णनकारी हुनाको साथै अल्लाहको डर धारण गर्ने व्यक्तिहरूका निम्त मार्गदर्शन र उपदेशस्वरूप पनि हो ।

وَلَا تَهِنُوْا وَلَا تَحْزَنُوْا وَاَنْتُمُ الْاَعْلَوْنَ اِنْ كُنْتُمْ مُّؤْمِنِيْنَ ﴿١٤٠﴾

१४०. दुर्बलता नदेखाऊ, सन्ताप पनि नगर; तथा तिमीहरू विश्वासी हौ भने अवश्य पनि तिमीहरू नै सर्वोपरि हुनेछौ ।

اِنْ يَّمْسَسْكُمْ قَرْحٌ فَقَدْ مَسَّ الْقَوْمَ قَرْحٌ مِّثْلُهٗ ۗ وَتِلْكَ الْاَيَّامُ نُدَاوِلُهَا بَيْنَ النَّاسِ ۚ وَلِيَعْلَمَ اللّٰهُ الَّذِيْنَ اٰمَنُوْا وَيَتَّخِذَ مِنْكُمْ شُهَدَآءَ ۗ وَاللّٰهُ لَا يُحِبُّ الظّٰلِمِيْنَ ﴿١٤١﴾

१४१. यदि तिमीहरूलाई एउटा आघात लाग्यो भने निश्चय नै त्यस्तै आघात ती अविश्वासी) व्यक्तिहरूलाई पनि लागिसकेको छ । तथा यस्ता अवसरहरू हामी मानिसहरूका बीचमा पालैपालोसित ल्याउने गर्छौं (ताकि तिनीहरूले उपदेश प्राप्त गर्न सकून्), तथा अल्लाहले विश्वासीहरूलाई (अरूबाट) पृथक गर्न सकून्, तथा तिमीहरूमध्येबाट साक्षी राख्न सकून् । तथा अल्लाहले अन्यायकारीहरूलाई मन पराउँदैनन् ।

وَلِيُمَحِّصَ اللّٰهُ الَّذِيْنَ اٰمَنُوْا وَيَمْحَقَ الْكٰفِرِيْنَ ﴿١٤٢﴾

१४२. तथा अल्लाहले तिनीहरूलाई पवित्र तुल्याउन जसले विश्वास स्थापना गर्छन्, र अविश्वासीहरूलाई ध्वंस गरून् ।

أَمْ حَسِبْتُمْ أَنْ تَدْخُلُوا الْجَنَّةَ وَلَمَّا يَعْلَمِ اللّٰهُ الَّذِينَ جَاهَدُوا مِنْكُمْ وَيَعْلَمَ الصّٰبِرِينَ ﴿١٤٢﴾

१४३. जब तिमीहरूमध्येका -अल्लाहका मार्गमा) संघर्ष गर्ने तथा धैर्यधारण गर्नेहरूलाई अल्लाहले अहिलेसम्म राम्ररी छुट्याई सकेकै छैनन् भने, के तिमीहरू स्वर्गमा प्रवेश गर्नेछौ भनी तिमीहरूले ठानेका छौं ?

وَلَقَدْ كُنْتُمْ تَمَنَّوْنَ الْمَوْتَ مِنْ قَبْلِ أَنْ تَلْقَوْهُ فَقَدْ رَأَيْتُمُوهُ وَأَنْتُمْ تَنْظُرُونَ ﴿١٤٣﴾

१४४. तथा तिमीहरू यस मृत्युको इच्छा त्यससँग साक्षात हुनुभन्दा अघि नै गर्ने गर्थ्यौ, अब अन्तमा जब तिमीहरूले त्यसलाई देख्यौ तिमीहरू (स्तब्ध भएर) एकोहोरो हेरिरहन पुग्यौ ।

وَمَا مُحَمَّدٌ إِلَّا رَسُولٌ قَدْ خَلَتْ مِنْ قَبْلِهِ الرُّسُلُ أَفَإِنْ مَاتَ أَوْ قُتِلَ انْقَلَبْتُمْ عَلٰى أَعْقَابِكُمْ وَمَنْ يَنْقَلِبْ عَلٰى عَقِبَيْهِ فَلَنْ يَضُرَّ اللّٰهَ شَيْئًا وَسَيَجْزِي اللّٰهُ الشّٰكِرِينَ ﴿١٤٤﴾

१४५. तथा मुहम्मद केवल एक सन्देशवाहक हुन । निश्चय नै उनीभन्दा अघि पनि (सबै) सन्देशवाहकहरू बितिसकेका छन् । तब के यदि उनको मृत्यु भएमा अथवा उनको हत्या भएमा तिमीहरू उल्टै पाउ विमुख हुनेछौ ? तथा जुन व्यक्ति उल्टा पाउ विमुख हुन्छ, त्यसले अल्लाहको केही बिगार्न सक्नेछैन । तथा अल्लाहले कृतज्ञहरूलाई अवश्य पारितोषिक प्रदान गर्नेछन् ।

وَمَا كَانَ لِنَفْسٍ أَنْ تَمُوتَ إِلَّا بِإِذْنِ اللّٰهِ كِتٰبًا مُؤَجَّلًا وَمَنْ يُرِدْ ثَوَابَ الدُّنْيَا نُؤْتِهِ مِنْهَا وَمَنْ يُرِدْ ثَوَابَ الْآخِرَةِ نُؤْتِهِ مِنْهَا وَسَنَجْزِي الشّٰكِرِينَ ﴿١٤٥﴾

१४६. तथा कुनै प्राणी मर्न सक्दैन अल्लाहको आज्ञाबिना– एउटा निर्धारित म्यादको निर्णय–तथा जुन व्यक्तिले यस सांसारिक जीवनको प्रतिफल चाहन्छ, त्यसलाई हामी त्यसबाट प्रदान गर्नेछौं; तथा जुन व्यक्तिले परलोकको प्रतिफल चाहन्छ, हामी उसलाई त्यसबाट प्रदान गर्नेछौं; तथा हामी कृतज्ञहरूलाई अवश्य पारितोषिक दिनेछौं ।

وَكَأَيِّنْ مِنْ نَبِيٍّ قٰتَلَ مَعَهُ رِبِّيُّونَ كَثِيرٌ فَمَا وَهَنُوا لِمَا أَصَابَهُمْ فِي سَبِيلِ اللّٰهِ وَمَا ضَعُفُوا وَمَا اسْتَكَانُوا وَاللّٰهُ يُحِبُّ الصّٰبِرِينَ ﴿١٤٦﴾

१४७. तथा कैयौं यस्ता नबी सिद्धपुरुष)हरू भएका छन्, जसका साथ रहेर अनेकौं धर्मपरायण व्यक्तिहरूले संघर्ष गरे । अतः अल्लाहका मार्गमा जे जति तिनीहरूले भोलेथे त्यसबाट न त तिनीहरू

सुस्त भए न तिनीहरूले दुलर्बलता प्रदर्शन गरे न (शत्रुका सामु) कातरता नै देखाए । तथा अल्लाह धैर्यधारण गर्नेहरूलाई प्रेम गर्छन् ।

وَمَا كَانَ قَوْلَهُمْ إِلَّا أَنْ قَالُوا رَبَّنَا اغْفِرْ لَنَا ذُنُوبَنَا وَإِسْرَافَنَا فِي أَمْرِنَا وَثَبِّتْ أَقْدَامَنَا وَانْصُرْنَا عَلَى الْقَوْمِ الْكَافِرِينَ ﴿١٤٨﴾

१४८. तथा तिनीहरूले अरू केही नभनी केवल यो मात्र भने, 'हे हाम्रा प्रतिपालक, हाम्रो कसूर तथा हाम्रा कार्यहरूमा भएका अतिवादप्रति हामीलाई क्षमाप्रदान गर, तथा हाम्रा पाउ दृढ गर र अविश्वासी मानिसहरूका बिरुद्ध हाम्रो मद्दत गर ।'

فَآتَاهُمُ اللَّهُ ثَوَابَ الدُّنْيَا وَحُسْنَ ثَوَابِ الْآخِرَةِ ۗ وَاللَّهُ يُحِبُّ الْمُحْسِنِينَ ﴿١٤٩﴾

१४९. अत: अल्लाहले तिनीहरूलाई यस संसारको प्रतिदान तथा परलोकको सर्वोत्तम पारितोषिक प्रदान गरे । तथा अल्लाह सत्कर्मीहरूसँग प्रेम गर्छन् ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا إِنْ تُطِيعُوا الَّذِينَ كَفَرُوا يَرُدُّوكُمْ عَلَى أَعْقَابِكُمْ فَتَنْقَلِبُوا خَاسِرِينَ ﴿١٥٠﴾

१५०. हे विश्वासीजन हो ! यदि तिमीहरूले ती व्यक्तिहरूको जसले अविश्वास गरेका छन् आज्ञापालन गऱ्यौ भने तिनीहरूले तिमीहरूलाई उल्टै पाउ विमुख गर्नेछन्, तथा तिमीहरू घाटा खाने व्यक्तिहरू हुनेछौ ।

بَلِ اللَّهُ مَوْلَاكُمْ ۖ وَهُوَ خَيْرُ النَّاصِرِينَ ﴿١٥١﴾

१५१. होइन, (अपितु) अल्लाह तिमीहरूका रक्षक रहेका छन्, उनी सर्वोत्तम सहयोगी हुन् ।

سَنُلْقِي فِي قُلُوبِ الَّذِينَ كَفَرُوا الرُّعْبَ بِمَا أَشْرَكُوا بِاللَّهِ مَا لَمْ يُنَزِّلْ بِهِ سُلْطَانًا ۖ وَمَأْوَاهُمُ النَّارُ ۚ وَبِئْسَ مَثْوَى الظَّالِمِينَ ﴿١٥٢﴾

१५२. ती व्यक्तिहरू जसले अविश्वास गरेका छन् हामी तिनीहरूका हृदयमा रवाफ (भय) उत्पन्न गर्नेछौं किनभने उनीहरूले त्यस्ता (वस्तुहरूलाई) अल्लाहका भागीदार तुल्याए जसबारे उनले कुनै प्रमाण अवतीर्ण गरेका छैनन् । तथा तिनीहरूको वासस्थान अग्नि हो र अन्यायकारीहरूको ठेगाना त कति नै निकृष्ट हुने गर्दछ ।

وَلَقَدْ صَدَقَكُمُ اللَّهُ وَعْدَهُ إِذْ تَحُسُّونَهُم بِإِذْنِهِ ۖ حَتَّىٰ إِذَا فَشِلْتُمْ وَتَنَازَعْتُمْ فِي الْأَمْرِ وَعَصَيْتُم مِّن بَعْدِ مَا أَرَاكُم مَّا تُحِبُّونَ ۚ مِنكُم مَّن يُرِيدُ الدُّنْيَا وَمِنكُم مَّن يُرِيدُ الْآخِرَةَ ۚ ثُمَّ صَرَفَكُمْ عَنْهُمْ لِيَبْتَلِيَكُمْ ۖ وَلَقَدْ عَفَا عَنكُمْ ۗ وَاللَّهُ ذُو فَضْلٍ عَلَى الْمُؤْمِنِينَ ﴿١٥٢﴾

१५३. तथा अल्लाहले (त्यस समय) तिमीहरूप्रति आफ्ना वचन उत्तमढंगले पूर्ण गरेका थिए जब तिमीहरू उनको आज्ञानुसार तिनीहरूलाई मार्दै र ध्वंस गर्दै थियौ, अतः जब तिमीहरूले (पवित्र नबी उनीप्रति शान्ति होस्-को आज्ञापालन गर्न) काँतरता देखायौ तथा आदेशको वास्तविक उद्देश्यको सम्बन्धमा परस्पर विवाद गर्न लाग्यौ र तिमीहरूको हृदयको चाहनालाई उनले -विजयको रूपमा) ग्रहण गरेपश्चात् तिमीहरूले आज्ञा उल्लङ्घन गर्‍यौ, (तब उनले आफ्नो मद्दत रोकिदिए) । तिमीहरूमध्ये केही यस संसारका अभिलाषी थिए भने केही चाँहि परलोकका अभिलाषी । तत्पश्चात् तिमीहरूको परीक्षा लिनका निम्ति उनले तिमीहरूलाई उनीहरूबाट घुमाएर लगे तथा तिमीहरूलाई उनले निश्चय नै क्षमा गरिदिएका छन् । र, अल्लाह विश्वासीहरूप्रति अति कृपालु छन् ।

إِذْ تُصْعِدُونَ وَلَا تَلْوُونَ عَلَىٰ أَحَدٍ وَالرَّسُولُ يَدْعُوكُمْ فِي أُخْرَاكُمْ فَأَثَابَكُمْ غَمًّا بِغَمٍّ لِّكَيْلَا تَحْزَنُوا عَلَىٰ مَا فَاتَكُمْ وَلَا مَا أَصَابَكُمْ ۗ وَاللَّهُ خَبِيرٌ بِمَا تَعْمَلُونَ ﴿١٥٣﴾

१५४ जब तिमीहरूपछिल्तिर कसैलाई नहेरी भागिरहेथ्यौ जब रसूल सन्देशवाहक)ले भने– तिमीहरूका पछिल्तिरबाट तिमीहरूलाई बोलाइरहेका थिए, तब उनले तिमीहरूलाई एउटा दुःखको स्थानमा अर्को दुःख दिए ताकि जुन कुरा तिमीहरूका हातबाट उम्क्यो र जुन कुरा तिमीहरूमाथि आइपर्‍यो त्यसप्रति तिमीहरू दुखित नहोऊ, तथा जुन कार्य तिमीहरू गर्छौ त्यसप्रति अल्लाह पूर्णविदित छन्* ।

---

* टिप्पणी : कहिलेकाहीँ एउटा ठूलो हानिको डरले पहिला उठाएका तुलनात्मक साना हानिहरूको पीडालाई मेटाइदिन्छ । एउटा यस्तै स्थिति ओहदको लडाइँमा त्यसबेला देखापर्‍यो जब पवित्र नबी (उनीप्रति शान्ति होस्) को हताहतको मिथ्याखबरले मुस्लिम योद्धाहरूले व्यक्तिगतरूपमा भोगेका सबै पीडाहरू र हानिहरूको चिन्तन पूर्णरूपमा विलोप

ثُمَّ أَنْزَلَ عَلَيْكُمْ مِنْ بَعْدِ الْغَمِّ أَمَنَةً نُعَاسًا يَغْشَىٰ طَائِفَةً مِنْكُمْ ۖ وَطَائِفَةٌ قَدْ أَهَمَّتْهُمْ أَنْفُسُهُمْ يَظُنُّونَ بِاللَّهِ غَيْرَ الْحَقِّ ظَنَّ الْجَاهِلِيَّةِ ۖ يَقُولُونَ هَلْ لَنَا مِنَ الْأَمْرِ مِنْ شَيْءٍ ۗ قُلْ إِنَّ الْأَمْرَ كُلَّهُ لِلَّهِ ۗ يُخْفُونَ فِي أَنْفُسِهِمْ مَا لَا يُبْدُونَ لَكَ ۖ يَقُولُونَ لَوْ كَانَ لَنَا مِنَ الْأَمْرِ شَيْءٌ مَا قُتِلْنَا هَاهُنَا ۗ قُلْ لَوْ كُنْتُمْ فِي بُيُوتِكُمْ لَبَرَزَ الَّذِينَ كُتِبَ عَلَيْهِمُ الْقَتْلُ إِلَىٰ مَضَاجِعِهِمْ ۖ وَلِيَبْتَلِيَ اللَّهُ مَا فِي صُدُورِكُمْ وَلِيُمَحِّصَ مَا فِي قُلُوبِكُمْ ۗ وَاللَّهُ عَلِيمٌ بِذَاتِ الصُّدُورِ ﴿١٥٥﴾

१५५. पुनः त्यस दुःखको घडीपश्चात्, उनले निद्रास्वरूप शान्ति अवतीर्ण गरे, जसले तिमीहरूमध्ये एक समूहलाई आक्रान्त पार्‍यो; अर्को एउटा समूह भने यस्तो थियो जसलाई आफ्नो ज्यानको चिन्ताले व्याकुल तुल्याएको थियो । तिनीहरू अल्लाहका सम्बन्धमा अबोधपूर्ण धारणासदृश भूल धारणा राख्दथे । तिनीहरू भन्थे, 'के राजकाजमा हाम्रो पनि केही सहभागिता रहेको छ? तिमी भन, "सम्पूर्ण राज्य अल्लाहकै हो ।" तिनीहरू आफ्ना मनमा ती कुरा लुकाउँछन् जुन कुरा तिम्रासामु प्रकट गर्दैनन् । तिनीहरू भन्छन्, 'यदि राजकाजमा हाम्रो केही सहभागिता रहेको भए हामी यहाँ मारिने थिएनौं ।' तिमी भन, 'यदि तिमीहरू आफ्ना घरभित्रै रहन्थ्यौ भने पनि जसप्रति युद्ध निर्धारण गरिएका थियो तिनीहरू अवश्य आफ्ना मृत्युशैय्यातर्फ प्रस्थान गर्ने थिए ।' -ताकि अल्लाहले आफ्नो आदेश सम्पन्न गरून्), तथा जुन कुरा तिमीहरूका मुटुमा थियो त्यसलाई जाँचून, तथा तिमीहरूका हृदयमा रहेका कुरालाई शुद्धि गरून् । तथा अल्लाह हृदयका कुराहरूलाई राम्ररी जान्दछन् ।

إِنَّ الَّذِينَ تَوَلَّوْا مِنْكُمْ يَوْمَ الْتَقَى الْجَمْعَانِ إِنَّمَا اسْتَزَلَّهُمُ الشَّيْطَانُ بِبَعْضِ مَا كَسَبُوا ۖ وَلَقَدْ عَفَا اللَّهُ عَنْهُمْ ۗ إِنَّ اللَّهَ غَفُورٌ حَلِيمٌ ﴿١٥٦﴾

१५६. जुन दिन दुवै लस्करमा परस्पर मुठभेड भएथ्यो* त्यस दिन तिमीहरूमध्ये जसले पिठ्यूँ देखाएको थियो निश्चय नै तिनीहरूका केही कर्महरूले गर्दा तिनीहरूलाई सैतानले चिप्ल्याउन चाहेको थियो । परन्तु, अब अल्लाहले निश्चय नै तिनीहरूलाई क्षमादान गरिसकेका छन् ।

---

हुनपुग्यो । त्यसपछि उनी जीवित रहेको खबरले त्यस हानिको अनुभूतिलाई गहिरो सन्तुष्टि र कृतज्ञताको अनुभूतिमा परिवर्तन गर्‍यो ।

* ओहदको लडाइँ ।

निश्चय नै अल्लाह परम क्षमाशील, परम सहिष्णु छन् ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا لَا تَكُونُوا كَالَّذِينَ كَفَرُوا وَقَالُوا لِإِخْوَانِهِمْ إِذَا ضَرَبُوا فِي الْأَرْضِ أَوْ كَانُوا غُزًّى لَّوْ كَانُوا عِندَنَا مَا مَاتُوا وَمَا قُتِلُوا لِيَجْعَلَ اللَّهُ ذَٰلِكَ حَسْرَةً فِي قُلُوبِهِمْ ۗ وَاللَّهُ يُحْيِي وَيُمِيتُ ۗ وَاللَّهُ بِمَا تَعْمَلُونَ بَصِيرٌ ﴿١٥٦﴾

१५७. हे विश्वासीजन हो ! ती अविश्वासी व्यक्तिहरूझैं नबन तथा जसले आफ्ना भाइहरू जब पृथ्वीमा यात्रा गर्छन् अथवा युद्धका निम्ति निस्कछन् तब तिनका बारेमा भन्छन्, 'यदि तिनीहरू हामीसँग रहेका भए न मर्ने थिए न त तिनीहरूको हत्या नै हुन्थ्यो ।' (यो यस्तै हुनेछ), ताकि अल्लाहले यस कुरालाई तिनीहरूका हृदयमा एउटा पश्चात्तापको हेतु बनाउन् । तथा अल्लाह जीवनदान गर्छन्, तथा मृत्यु पनि प्रदान गर्छन् र जुन कार्य तिमीहरू गर्छौ त्यसलाई अल्लाहले देखिरहेछन् ।

وَلَئِن قُتِلْتُمْ فِي سَبِيلِ اللَّهِ أَوْ مُتُّمْ لَمَغْفِرَةٌ مِّنَ اللَّهِ وَرَحْمَةٌ خَيْرٌ مِّمَّا يَجْمَعُونَ ﴿١٥٧﴾

१५८. तथा यदि तिमीहरू अल्लाहका मार्गमा मारियौ अथवा मर्‍यौ भने अवश्य अल्लाहबाट प्राप्त क्षमादान र करुणा तिनीहरूले सञ्चय गर्ने वस्तुभन्दा अधिक उत्तम हुनेछ ।

وَلَئِن مُّتُّمْ أَوْ قُتِلْتُمْ لَإِلَى اللَّهِ تُحْشَرُونَ ﴿١٥٨﴾

१५९. तथा यदि तिमीहरू मर्‍यौ अथवा मारियौ भने, निश्चय नै तिमीहरूलाई एकत्रित गरी अल्लाहतर्फ नै लगिनेछ ।

فَبِمَا رَحْمَةٍ مِّنَ اللَّهِ لِنتَ لَهُمْ ۖ وَلَوْ كُنتَ فَظًّا غَلِيظَ الْقَلْبِ لَانفَضُّوا مِنْ حَوْلِكَ ۖ فَاعْفُ عَنْهُمْ وَاسْتَغْفِرْ لَهُمْ وَشَاوِرْهُمْ فِي الْأَمْرِ ۖ فَإِذَا عَزَمْتَ فَتَوَكَّلْ عَلَى اللَّهِ ۚ إِنَّ اللَّهَ يُحِبُّ الْمُتَوَكِّلِينَ ﴿١٥٩﴾

१६०. तथा अल्लाहको (परम) कृपाले गर्दा नै तिमी तिनीहरूप्रति उदार रहेका छौ, तथा यदि तिमी रुखा र कठोरहृदयी रहेका भए यिनीहरू तिम्रा वरिपरिबाट छरपष्ट हुने थिए । अतः तिनीहरूलाई माफ गर तथा तिनीहरूका निम्ति क्षमादान माग, तथा महत्त्वपूर्ण मामिलाहरूमा तिनीहरूसँग परामर्श लिने गर; तथा जब तिमी दृढसङ्कल्प गर्छौ तब अल्लाहप्रति भरोसा कायम राख, निश्चय नै अल्लाहले तिनीहरूलाई मन पराउँछन् जसले

(उनीप्रति) भरोसा गर्ने गर्छन् ।

१६१. यदि अल्लाहले तिमीहरूको मद्दत गरे भने तिमीहरूमाथि कोही विजयी हुन सक्नेछैन; तथा यदि उनले तिमीहरूलाई त्यागी दिए भने, उनीबाहेक को छ जसले तिमीहरूको मद्दत गर्नसक्छ? त्यसकारण, विश्वासीहरूले अल्लाहप्रति नै भरोसा राख्नु पर्छ ।

إِنْ يَّنْصُرْكُمُ اللّٰهُ فَلَا غَالِبَ لَكُمْ ۚ وَإِنْ يَّخْذُلْكُمْ فَمَنْ ذَا الَّذِيْ يَنْصُرُكُمْ مِّنْۢ بَعْدِهٖ ۗ وَعَلَى اللّٰهِ فَلْيَتَوَكَّلِ الْمُؤْمِنُوْنَ ﴿١٦١﴾

१६२. तथा कुनै नबीको निम्ति बेइमानी गर्नु सम्भव छैन । तथा जसले बेइमानी गर्नेछ उसले जुन कार्यमा बेइमानी गरेको छ त्यसलाई पुनरुत्थानका दिन (आफूसँगै) ल्याउनेछ । तब प्रत्येक आत्मालाई उसले कमाएको कुरो पूर्णरूपमा प्रदान गरिनेछ, तथा उनीहरूप्रति अन्याय गरिनेछैन ।

وَمَا كَانَ لِنَبِيٍّ اَنْ يَّغُلَّ ۗ وَمَنْ يَّغْلُلْ يَأْتِ بِمَا غَلَّ يَوْمَ الْقِيٰمَةِ ۚ ثُمَّ تُوَفّٰى كُلُّ نَفْسٍ مَّا كَسَبَتْ وَهُمْ لَا يُظْلَمُوْنَ ﴿١٦٢﴾

१६३. के त्यो व्यक्ति जसले अल्लाहको इच्छालाई अनुसरण गर्छ त्यो व्यक्तिसरह हुनसक्छ र जो अल्लाहको प्रकोपका साथ फर्किन्छ तथा जसको बासस्थान नर्क रहेको छ? र त्यो अति नै निकृष्ट आश्रय रहेको छ !

اَفَمَنِ اتَّبَعَ رِضْوَانَ اللّٰهِ كَمَنْۢ بَآءَ بِسَخَطٍ مِّنَ اللّٰهِ وَمَأْوٰىهُ جَهَنَّمُ ۗ وَبِئْسَ الْمَصِيْرُ ﴿١٦٣﴾

१६४. अल्लाहका जुनाफमा तिनीहरूका विभिन्न दर्जाहरू निर्धारित छन् । तथा अल्लाहले तिनीहरूका कार्य देखिरहेछन् ।

هُمْ دَرَجٰتٌ عِنْدَ اللّٰهِ ۗ وَاللّٰهُ بَصِيْرٌۢ بِمَا يَعْمَلُوْنَ ﴿١٦٤﴾

१६५. निश्चय नै, अल्लाहले विश्वासीजनहरू माथि तिमीहरूमध्येकै एकजना सन्देशवाहक पठाएर अनुग्रह गरेका छन्, जसले तिनीहरूका सामु उनका चिह्नहरू पढेर सुनाउँछन् तथा तिनीहरूलाई पवित्र तुल्याउँछन्, तथा तिनीहरूलाई पुस्तक र तत्त्वज्ञान सिकाउँछन् । तथा त्यसअघि निश्चय नै

لَقَدْ مَنَّ اللّٰهُ عَلَى الْمُؤْمِنِيْنَ اِذْ بَعَثَ فِيْهِمْ رَسُوْلًا مِّنْ اَنْفُسِهِمْ يَتْلُوْا عَلَيْهِمْ اٰيٰتِهٖ وَيُزَكِّيْهِمْ وَيُعَلِّمُهُمُ الْكِتٰبَ وَالْحِكْمَةَ ۚ وَاِنْ كَانُوْا مِنْ قَبْلُ لَفِيْ ضَلٰلٍ مُّبِيْنٍ ﴿١٦٥﴾

तिनीहरू स्पष्टरूपले भ्रममा रहेका थिए ।

أَوَلَمَّآ أَصَابَتْكُم مُّصِيبَةٌ قَدْ أَصَبْتُم مِّثْلَيْهَا قُلْتُمْ أَنَّىٰ هَٰذَا ۖ قُلْ هُوَ مِنْ عِندِ أَنفُسِكُمْ ۗ إِنَّ ٱللَّهَ عَلَىٰ كُلِّ شَيْءٍ قَدِيرٌ ﴿١٦٦﴾

१६६. कस्तो कुरा ! जब तिमीहरूमाथि एउटा यस्तो विपद आइलाग्यो जसको दुईगुना विपद तिमीहरूद्वारा घटित भइसकेको थियो तब तिमीहरू भन्छौ- "यो कहाँबाट आयो?" तिमी भन, "यो ता तिमीहरू आफैंबाट आएको हो ।" निश्चय नै सम्पूर्ण कुराहरूमाथि अल्लाहको पूर्ण शक्ति व्याप्त रहेको छ ।

وَمَآ أَصَابَكُمْ يَوْمَ ٱلْتَقَى ٱلْجَمْعَانِ فَبِإِذْنِ ٱللَّهِ وَلِيَعْلَمَ ٱلْمُؤْمِنِينَ ﴿١٦٧﴾

१६७. जब दुई समूहमा मुठभेड भएको थियो* त्यस दिन तिमीहरूमाथि जुन कुरा आइलाग्यो, (त्यो) अल्लाहको आदेशद्वारा नै (भएको) थियो; ताकि उनले विश्वासीहरूलाई पृथक गर्न सकून ।

وَلِيَعْلَمَ ٱلَّذِينَ نَافَقُوا ۚ وَقِيلَ لَهُمْ تَعَالَوْا قَاتِلُوا فِي سَبِيلِ ٱللَّهِ أَوِ ٱدْفَعُوا ۖ قَالُوا لَوْ نَعْلَمُ قِتَالًا لَّٱتَّبَعْنَاكُمْ ۗ هُمْ لِلْكُفْرِ يَوْمَئِذٍ أَقْرَبُ مِنْهُمْ لِلْإِيمَانِ ۚ يَقُولُونَ بِأَفْوَاهِهِم مَّا لَيْسَ فِي قُلُوبِهِمْ ۗ وَٱللَّهُ أَعْلَمُ بِمَا يَكْتُمُونَ ﴿١٦٨﴾

१६८. तथा, ढोंगीहरूलाई (पनि) पृथक गर्न सकून् । तथा तिनीहरूलाई भनिएको थियो, "आऊ, अल्लाहका मार्ग निमित्त लडाइँ गर तथा (शत्रुको आक्रमणलाई) रोक," तिनीहरूले भने, "यदि हामीले लडाइँ गर्न जानेको भए अवश्य हामी तिमीहरूकापछि लाग्ने थियौं ।" त्यसदिन तिनीहरू विश्वासभन्दा अविश्वासका अधिक निकट थिए । तिनीहरू आफ्ना हृदयमा नभएका कुराहरू मुखले गर्थे । तथा जुन कुरा तिनीहरू लुकाउँछन् अल्लाहले त्यसलाई सर्वाधिक जान्दछन् ।

ٱلَّذِينَ قَالُوا لِإِخْوَانِهِمْ وَقَعَدُوا لَوْ أَطَاعُونَا مَا قُتِلُوا ۗ قُلْ فَٱدْرَءُوا عَنْ أَنفُسِكُمُ ٱلْمَوْتَ إِن كُنتُمْ صَادِقِينَ ﴿١٦٩﴾

१६९. (यी व्यक्तिहरू तिनै हुन्) जसले आफ्ना भाइ-बान्धवहरूका बारेमा, जब तिनीहरू (स्वयम्‌चाहिँ) पछि बसेका थिए, के भनेका थिए भने, "यदि तिनीहरूले हाम्रो कुरो मानेका भए तिनीहरू मारिने थिएनन् ।" तिमी भन, "यदि तिमीहरू साँचा हौ भने स्वयम्‌बाट मृत्युलाई

---

* ओहदको लडाइँ ।

पन्छाऊ ।"

१७०. जुन व्यक्तिहरू अल्लाहका मार्गमा मारिएका छन् तिनीहरूलाई मृत सदृश नठान । होइन, तिनीहरू ता आफ्ना प्रतिपालकककहाँ जीवित छन्, उत्तम जीविका प्रदान गरिरहिएको छ ।

وَلَا تَحْسَبَنَّ الَّذِيْنَ قُتِلُوْا فِيْ سَبِيْلِ اللّٰهِ اَمْوَاتًا ؕ بَلْ اَحْيَآءٌ عِنْدَ رَبِّهِمْ يُرْزَقُوْنَ ﴿١٧٠﴾

१७१. अल्लाहले आफ्नो कृपाबाट जुन तिनीहरूलाई प्रदान गरेका छन्, त्यसप्रति तिनीहरू प्रसन्न छन्, तथा ती व्यक्तिहरूका निम्ति -पनि) प्रसन्न छन् जुन तिनीहरूभन्दा पछाडिबाट आएर अहिलेसम्म तिनीहरूसँग सम्मिलित भएका छैनन्, कारण तिनीहरूमा न कुनै डर (रहनेछ) न त तिनीहरू चिन्ताग्रस्त हुनेछन्

فَرِحِيْنَ بِمَآ اٰتٰىهُمُ اللّٰهُ مِنْ فَضْلِهٖ ۙ وَيَسْتَبْشِرُوْنَ بِالَّذِيْنَ لَمْ يَلْحَقُوْا بِهِمْ مِّنْ خَلْفِهِمْ ۙ اَلَّا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُوْنَ ﴿١٧١﴾

१७२. तिनीहरू अल्लाहप्रदत्त वैभव र (उनको) अनुग्रहप्रति तथा अल्लाहले विश्वासीहरूको प्रतिदान खेर पाल्दैनन् (भन्ने तथ्यप्रति) प्रसन्न छन् ।

يَسْتَبْشِرُوْنَ بِنِعْمَةٍ مِّنَ اللّٰهِ وَفَضْلٍ ۙ وَّاَنَّ اللّٰهَ لَا يُضِيْعُ اَجْرَ الْمُؤْمِنِيْنَ ﴿١٧٢﴾

१७३. ती व्यक्तिहरूले जसले घायल भएपश्चात् पनि अल्लाह तथा सन्देशवाहकको आव्हानलाई स्वीकार गरे- तिनीहरूमध्ये जसले उपकार गरे तथा धर्मनिष्ठ रहे तिनीहरूले उत्तम प्रतिदान प्राप्त गर्नेछन् ।

اَلَّذِيْنَ اسْتَجَابُوْا لِلّٰهِ وَالرَّسُوْلِ مِنْ بَعْدِ مَآ اَصَابَهُمُ الْقَرْحُ ۛؕ لِلَّذِيْنَ اَحْسَنُوْا مِنْهُمْ وَاتَّقَوْا اَجْرٌ عَظِيْمٌ ﴿١٧٣﴾

१७४. ती व्यक्तिहरू जसलाई "तिमीहरू विरुद्ध धेरै मानिस एकत्रित भएका छन् तसर्थ डराऊ" भनी मानिसहरूले भने, तब त्यस कुराबाट तिनीहरूको विश्वास झन बढ्यो र तिनीहरूले भने, "हाम्रा निम्ति अल्लाह नै पर्याप्त छन्, तथा उनी अत्युत्तम संरक्षक हुन् ।"

اَلَّذِيْنَ قَالَ لَهُمُ النَّاسُ اِنَّ النَّاسَ قَدْ جَمَعُوْا لَكُمْ فَاخْشَوْهُمْ فَزَادَهُمْ اِيْمَانًا ۖ وَّقَالُوْا حَسْبُنَا اللّٰهُ وَنِعْمَ الْوَكِيْلُ ﴿١٧٤﴾

१७५. अतः तिनीहरू अल्लाहका तर्फबाट (वृहत्) वैभव तथा (महान)

فَانْقَلَبُوْا بِنِعْمَةٍ مِّنَ اللّٰهِ وَفَضْلٍ لَّمْ يَمْسَسْهُمْ سُوْٓءٌ ۙ وَّاتَّبَعُوْا رِضْوَانَ

اللّٰهِ ۗ وَاللّٰهُ ذُوْ فَضْلٍ عَظِيْمٍ (١٧٤)

करुणाका साथ फर्के तथा तिनीहरूलाई कुनै सङ्कटले छोएन; तथा तिनीहरूले अल्लाहको प्रसन्नताको अनुसरण गरे; तथा अल्लाह परम समृद्धिका मालिक हुन् ।

اِنَّمَا ذٰلِكُمُ الشَّيْطٰنُ يُخَوِّفُ اَوْلِيَآءَهٗ ۖ فَلَا تَخَافُوْهُمْ وَخَافُوْنِ اِنْ كُنْتُمْ مُّؤْمِنِيْنَ (١٧٥)

१७६. त्यो सैतान नै हो जसले केवल आफ्ना मित्रहरूलाई डर देखाउँछ, अतः यदि तिमीहरू विश्वासी हौ भने तिनीहरूदेखि नडराऊ, अपितु मदेखि डराऊ ।

وَلَا يَحْزُنْكَ الَّذِيْنَ يُسَارِعُوْنَ فِى الْكُفْرِ ۚ اِنَّهُمْ لَنْ يَّضُرُّوا اللّٰهَ شَيْـًٔا ۗ يُرِيْدُ اللّٰهُ اَلَّا يَجْعَلَ لَهُمْ حَظًّا فِى الْاٰخِرَةِ ۚ وَلَهُمْ عَذَابٌ عَظِيْمٌ (١٧٦)

१७७. त्था जुन व्यक्तिहरू तीव्रगतिले अविश्वासग्रस्त भइरहेछन् तिनीहरूले तिमीहरूलाई दुःखित नतुल्याउन्; तिनीहरूले कदापि अल्लाहको केही हानि गर्न सक्नेछैनन् । तिनीहरूका निम्ति परलोकमा कुनै अंश नरहोस् भन्ने अल्लाहको इच्छा रहेको छ; तथा तिनीहरूका निम्ति एउटा प्रचण्ड दण्ड रहेको छ ।

اِنَّ الَّذِيْنَ اشْتَرَوُا الْكُفْرَ بِالْاِيْمَانِ لَنْ يَّضُرُّوا اللّٰهَ شَيْـًٔا ۚ وَلَهُمْ عَذَابٌ اَلِيْمٌ (١٧٧)

१७८. निश्चय नै ती व्यक्तिहरू जसले विश्वासको मूल्यमा अविश्वास क्रय गरेका छन् तिनीहरूले अल्लाहको कुनै प्रकार हानी गर्न सक्नेछैनन्; तिनीहरूका निम्ति एउटा पीडादायक दण्ड रहेको छ ।

وَلَا يَحْسَبَنَّ الَّذِيْنَ كَفَرُوْٓا اَنَّمَا نُمْلِيْ لَهُمْ خَيْرٌ لِّاَنْفُسِهِمْ ۗ اِنَّمَا نُمْلِيْ لَهُمْ لِيَزْدَادُوْٓا اِثْمًا ۚ وَلَهُمْ عَذَابٌ مُّهِيْنٌ (١٧٨)

१७९. अविश्वासीहरूले हामीले तिनीहरूलाई दिएको अवकाश तिनीहरूका निम्ति लाभदायक हुनेछ भनी नठानून्; हामीले तिनीहरूलाई अवकाश दिनुको (परिणामस्वरूप) केवल तिनीहरू पापमा बढ्नेछन् तथा तिनीहरूका निम्ति एउटा अपमानजनक दण्ड रहेको छ ।

مَا كَانَ اللّٰهُ لِيَذَرَ الْمُؤْمِنِيْنَ عَلٰى مَآ اَنْتُمْ عَلَيْهِ حَتّٰى يَمِيْزَ الْخَبِيْثَ مِنَ الطَّيِّبِ ۗ وَمَا كَانَ اللّٰهُ لِيُطْلِعَكُمْ عَلَى

१८०. अल्लाहले विश्वासीहरूलाई त्यस अवस्थामा छाड्न सक्दैनन् जुन अवस्थामा तिमीहरू (वर्तमान) रहेका छौ, जबसम्म उनले दुष्टहरूलाई चरित्रवान

الْغَيْبِ وَلَٰكِنَّ اللَّهَ يَجْتَبِي مِن رُّسُلِهِ مَن يَشَاءُ ۖ فَآمِنُوا بِاللَّهِ وَرُسُلِهِ ۚ وَإِن تُؤْمِنُوا وَتَتَّقُوا فَلَكُمْ أَجْرٌ عَظِيمٌ ﴿١٧٩﴾

व्यक्तिहरूबाट पृथक गर्दैनन् । न त अल्लाहल तिमीहरूप्रति अदृश्यलाई प्रकट गर्न नै सक्छन परन्तु अल्लाहले आफ्ना सन्देशवाहककहरूमध्ये जसलाई चाहन्छन् छान्दछन् । । अत: अल्लाह तथा उनकासन्देशवाहककहरूप्रति विश्वास गर । यदि तिमीहरूले विश्वास गर्‍यौ र सत्यनिष्ठ भयौ भने तिमीहरूलाई एउटा ठूलो प्रतिदान प्राप्त हुनेछ ।

وَلَا يَحْسَبَنَّ الَّذِينَ يَبْخَلُونَ بِمَا آتَاهُمُ اللَّهُ مِن فَضْلِهِ هُوَ خَيْرًا لَّهُم ۖ بَلْ هُوَ شَرٌّ لَّهُمْ ۖ سَيُطَوَّقُونَ مَا بَخِلُوا بِهِ يَوْمَ الْقِيَامَةِ ۗ وَلِلَّهِ مِيرَاثُ السَّمَاوَاتِ وَالْأَرْضِ ۗ وَاللَّهُ بِمَا تَعْمَلُونَ خَبِيرٌ ﴿١٨٠﴾

१८१. तथा ती व्यक्तिहरू जसले अल्लाहले आफ्नो कृपाबाट तिनीहरूलाई प्रदान गरेका (वस्तुहरू) प्रति कृपणता प्रकट गर्छन्, त्यो कार्य तिनीहरूका निम्ति लाभदायक हुन्छ भनी नठानून्; होइन, (अपितु) त्यो तिनीहरूका निम्ति हानिकारक छ । जुन (वस्तुका) सम्बन्धमा तिनीहरू कृपणता प्रकट गर्थे पुनरुत्थानका दिन त्यस (वस्तु) लाई अवश्यै तिनीहरूका गर्धनको कठालो बनाइनेछ । तथा आकाशमण्डल र पृथ्वीका सबै दायहरूका अधिकारी अल्लाह नै हुन् । तथा तिमीहरूका कार्यहरूप्रति अल्लाह पूर्ण अवगत छन् ।

لَّقَدْ سَمِعَ اللَّهُ قَوْلَ الَّذِينَ قَالُوا إِنَّ اللَّهَ فَقِيرٌ وَنَحْنُ أَغْنِيَاءُ ۘ سَنَكْتُبُ مَا قَالُوا وَقَتْلَهُمُ الْأَنبِيَاءَ بِغَيْرِ حَقٍّ وَنَقُولُ ذُوقُوا عَذَابَ الْحَرِيقِ ﴿١٨١﴾

१८२. "अल्लाह निर्धन छन् तथा हामी धनी छौं" भनी जुन व्यक्तिहरूले भनेका थिए, अल्लाहले तिनीहरूका कुरा निश्चय नै सुनिसकेका छन् । हामी तिनीहरूले भनेका कुरा र अन्यायपूर्वक नबी (सिद्ध) हरूलाई मार्ने तिनीहरूको प्रयासबारे अभिलेख राख्नेछौं; तथा हामी भन्नेछौं, "तिमीहरू ज्वलनशील दण्ड चाख ।"

ذَٰلِكَ بِمَا قَدَّمَتْ أَيْدِيكُمْ وَأَنَّ اللَّهَ لَيْسَ بِظَلَّامٍ لِّلْعَبِيدِ ﴿١٨٢﴾

१८३. जुन वस्तु तिमीहरूका हातले (तिमीहरू भन्दा) अघि पठाएको छ, त्यसैका कारण यो हुनेछ, तथा (वास्तविकता के हो भने) अल्लाह (आफ्ना) सेवकहरूप्रति अन्याय गर्दैनन् ।

الَّذِينَ قَالُوا إِنَّ اللَّهَ عَهِدَ إِلَيْنَا أَلَّا نُؤْمِنَ لِرَسُولٍ حَتَّىٰ يَأْتِيَنَا بِقُرْبَانٍ تَأْكُلُهُ النَّارُ ۗ قُلْ قَدْ جَاءَكُمْ رُسُلٌ مِّن قَبْلِي بِالْبَيِّنَاتِ وَبِالَّذِي قُلْتُمْ فَلِمَ قَتَلْتُمُوهُمْ إِن كُنتُمْ صَادِقِينَ ﴿١٨٣﴾

१८४. ती व्यक्तिहरू जसले भने, "अल्लाहले हामीलाई तबसम्म कुनै सन्देशवाहकप्रति विश्वास नगर्ने वचन लिएका छन् जबसम्म उसले हामीसमक्ष कुनै यस्तो बलि ल्याउदैन, जसलाई अग्निले भक्षण गरोस् । तिमी भन, 'मभन्दा पहिला तिमीहरूसमक्ष स्पष्ट चिह्नहरूका साथ सन्देशवाहकहरूको आगमन भइसकेको छ तथा त्यसका जसको तिमीहरूले वर्णन गऱ्यौ । तब यदि तिमीहरू सत्यवादी हौ भने किन तिनीहरूको हत्या गर्न चाहेका थियौ त?'

فَإِن كَذَّبُوكَ فَقَدْ كُذِّبَ رُسُلٌ مِّن قَبْلِكَ جَاءُوا بِالْبَيِّنَاتِ وَالزُّبُرِ وَالْكِتَابِ الْمُنِيرِ ﴿١٨٤﴾

१८५. तथा यदि तिनीहरूले तिमीलाई मिथ्यावादीको अभियोग लगाउँछन् भने यस्तो मिथ्यावादीको स्पष्ट चिह्नहरू, तथ्यज्ञानपूर्ण पुस्तकहरू, तथा उज्ज्वल धर्मग्रन्थका साथ आएका तिमीभन्दा अधिका सन्देशवाहकहरूलाई पनि लागिसकेको थियो ।

كُلُّ نَفْسٍ ذَائِقَةُ الْمَوْتِ ۗ وَإِنَّمَا تُوَفَّوْنَ أُجُورَكُمْ يَوْمَ الْقِيَامَةِ ۖ فَمَن زُحْزِحَ عَنِ النَّارِ وَأُدْخِلَ الْجَنَّةَ فَقَدْ فَازَ ۗ وَمَا الْحَيَاةُ الدُّنْيَا إِلَّا مَتَاعُ الْغُرُورِ ﴿١٨٥﴾

१८६. प्रत्येक प्राणीले मृत्युको स्वाद चाख्नेछ । तथा केवल पुनरुत्थानका दिन नै तिमीहरूलाई आफ्नो पूर्ण प्रतिदान प्रदान गरिनेछ । अतः जसलाई अग्निबाट टाढा लगियो, तथा स्वर्गमा प्रवेश गराइयो अवश्य नै उसले आफ्नो लक्ष प्राप्त गऱ्यो । यो सांसारिक जीवन त एउटा भ्रमयुक्त सुखभोग मात्र हो ।

لَتُبْلَوُنَّ فِي أَمْوَالِكُمْ وَأَنفُسِكُمْ وَلَتَسْمَعُنَّ مِنَ الَّذِينَ أُوتُوا الْكِتَابَ مِن قَبْلِكُمْ وَمِنَ الَّذِينَ أَشْرَكُوا أَذًى كَثِيرًا ۚ وَإِن تَصْبِرُوا وَتَتَّقُوا فَإِنَّ ذَٰلِكَ مِنْ عَزْمِ الْأُمُورِ ﴿١٨٦﴾

१८७. तिमीहरूलाई आफ्नो धन-सम्पत्ति र ज्यानका -व्यक्तित्वका) आधारमा अवश्य नै जाँचिनेछ । तथा तिमीहरूले अवश्य तिमीहरूभन्दा पहिला पुस्तक प्रदान गरिएका व्यक्तिहरूबाट तथा जसले (अल्लाहका) भागीदार तुल्याउने गर्छन्, ती व्यक्तिहरूबाट धेरै दुःखदायी कुराहरू सुन्नेछौं । परन्तु यदि तिमीहरूले

सहनशीलता देखायौ र सत्कर्म गर्‍यौ भने, निश्चय नै यो एउटा दृढ सङ्कल्पपूर्ण (कार्य) हो ।

وَاِذْ اَخَذَ اللّٰهُ مِيْثَاقَ الَّذِيْنَ اُوْتُوا الْكِتٰبَ لَتُبَيِّنُنَّهٗ لِلنَّاسِ وَلَا تَكْتُمُوْنَهٗ ؗ فَنَبَذُوْهُ وَرَآءَ ظُهُوْرِهِمْ وَاشْتَرَوْا بِهٖ ثَمَنًا قَلِيْلًا ؕ فَبِئْسَ مَا يَشْتَرُوْنَ ﴿۱۸۷﴾

१८८. तथा (स्मरण गर) जब अल्लाहले ती पुस्तक प्रदान गरिएका व्यक्तिहरूसँग (के भन्दै) अङ्गीकार लिएका थिए भने– "तिमीहरूले यस (पुस्तक)लाई मानिसहरू-समक्ष प्रकट गर्नेछौ र, यसलाई गुप्त राख्नेछैनौ ।" परन्तु तिनीहरूले त्यसलाई आफ्ना पिठ्यूँ पछाडि फ्याँकिदिए तथा त्यसको विनिमयमा तुच्छ मूल्य ग्रहण गरे । तिनीहरूले जे वस्तु क्रय गरे त्यो अति नै निकृष्ट छ ।

لَا تَحْسَبَنَّ الَّذِيْنَ يَفْرَحُوْنَ بِمَآ اَتَوْا وَّيُحِبُّوْنَ اَنْ يُّحْمَدُوْا بِمَا لَمْ يَفْعَلُوْا فَلَا تَحْسَبَنَّهُمْ بِمَفَازَةٍ مِّنَ الْعَذَابِ ۚ وَلَهُمْ عَذَابٌ اَلِيْمٌ ﴿۱۸۸﴾

१८९. (तिमी) पटक्कै नठान, जुन व्यक्तिहरू आफूले गरेका कार्यहरूबाट फुर्किन्छन् तथा आफूले नगरेका कार्यहरूप्रति पनि तिनीहरूको प्रशंसा गरियोस् भन्ने चाहना राख्छन्- तिनीहरू दण्डबाट सुरक्षित छन् भनी नठान । तिनीहरूले पीडादायक दण्ड भोग्नेछन् ।

وَلِلّٰهِ مُلْكُ السَّمٰوٰتِ وَالْاَرْضِ ؕ وَاللّٰهُ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ﴿۱۸۹﴾

१९०. तथा आकाशमण्डल र पृथ्वीको राज्य अल्लाहकै हो; तथा सम्पूर्ण कुरारुमाथि अल्लाहको पूर्ण शक्ति रहेको छ

اِنَّ فِيْ خَلْقِ السَّمٰوٰتِ وَالْاَرْضِ وَاخْتِلَافِ الَّيْلِ وَالنَّهَارِ لَاٰيٰتٍ لِّاُولِي الْاَلْبَابِ ﴿۱۹۰﴾

१९१. आकाशमण्डल तथा पृथ्वीको सृष्टिमा तथा रात्रि र दिवाको क्रमशः परिवर्तनमा बुद्धिमान मानिसहरूका निम्ति निश्चय नै चिह्नहरू रहेका छन् ।

الَّذِيْنَ يَذْكُرُوْنَ اللّٰهَ قِيَامًا وَّقُعُوْدًا وَّعَلٰى جُنُوْبِهِمْ وَيَتَفَكَّرُوْنَ فِيْ خَلْقِ السَّمٰوٰتِ وَالْاَرْضِ ۚ رَبَّنَا مَا خَلَقْتَ هٰذَا بَاطِلًا ۚ سُبْحٰنَكَ فَقِنَا عَذَابَ النَّارِ ﴿۱۹۱﴾

१९२. ती व्यक्तिहरू जसले उभिंदा, बस्दा तथा ढल्किँदा अल्लाहलाई स्मरण गर्छन्, तथा आकाशमण्डल र पृथ्वीका सृष्टिका सम्बन्धमा चिन्तन-मनन गर्छन्: "हे हाम्रा प्रतिपालक, तिमीले यसलाई व्यर्थ सृष्टि गरेका छैनौ; (होइन), तिमी पवित्र छौं; त्यसकारण हामीलाई अग्निको

दण्डबाट बचाउ ।"

१९३. "हे हाम्रा प्रतिपालक ! जसलाई तिमीले अग्निमा दाखिल गर्नेछौ", त्यसलाई त निश्चय नै तिमीले अपमानित गर्‍यौ । तथा अन्यायकारीहरूको कुनै सहयोगी हुनेछैन ।

رَبَّنَآ إِنَّكَ مَن تُدْخِلِ ٱلنَّارَ فَقَدْ أَخْزَيْتَهُۥ ۖ وَمَا لِلظَّٰلِمِينَ مِنْ أَنصَارٍ ﴿١٩٢﴾

१९४. हे हाम्रा प्रतिपालक ! हामीले एउटा पुकार्ने व्यक्तिलाई सुन्यौं जसले विश्वासका निम्ति (हामीलाई) बोलाउँछ "आफ्ना प्रतिपालकप्रति विश्वास गर," अतः हामीले विश्वास गर्‍यौं । हे हाम्रा प्रतिपालक ! त्यसकारण हाम्रा त्रुटिहरू (प्रति) हामीलाई क्षमा गर तथा हाम्रा पापहरू मोचन गर, तथा मृत्यु प्रदान गर्दा हामीलाई धर्मपरायणहरूसँग मिलाउ ।

رَّبَّنَآ إِنَّنَا سَمِعْنَا مُنَادِيًا يُنَادِى لِلْإِيمَٰنِ أَنْ ءَامِنُوا۟ بِرَبِّكُمْ فَـَٔامَنَّا ۚ رَبَّنَا فَٱغْفِرْ لَنَا ذُنُوبَنَا وَكَفِّرْ عَنَّا سَيِّـَٔاتِنَا وَتَوَفَّنَا مَعَ ٱلْأَبْرَارِ ﴿١٩٣﴾

१९५. "हे हाम्रा प्रतिपालक ! जुन कुराको तिमीले आफ्ना सन्देशवाहकहरू मार्फत् हामीलाई बचन दिएका छौ त्यो हामीलाई प्रदान गर; तथा पुनरुत्थानका दिन हामीलाई आपमानित नतुल्याऊ । निश्चय नै तिमी आफ्नो वचन भङ्ग गर्दैनौ ।"

رَبَّنَا وَءَاتِنَا مَا وَعَدتَّنَا عَلَىٰ رُسُلِكَ وَلَا تُخْزِنَا يَوْمَ ٱلْقِيَٰمَةِ ۗ إِنَّكَ لَا تُخْلِفُ ٱلْمِيعَادَ ﴿١٩٤﴾

१९६. अतः तिनीहरूका प्रतिपालकले तिनीहरूका (प्रार्थनाको) उत्तर (दिदै भने), म निश्चय नै तिमीहरूमध्ये कुनै कर्म गर्ने व्यक्तिको कर्मलाई नष्ट हुन दिनेछैन, चाहे त्यो पुरुष होस् अथवा महिला । तिमीहरू परस्पर एक अर्काबाट हौ । अतः ती बसाइँ सरेका व्यक्तिहरू तथा ती जसलाई आफ्ना घरबाट निकालियो, तथा मेरो मार्गमा यातना दिइयो, तथा युद्ध गरे र मारिए, म अवश्य तिनीहरूबाट तिनीहरूको पापमोचन गर्नेछु तथा तिनीहरूलाई यस्तो बगैंचामा प्रवेश गराउनेछु जसमुनि नहरहरू बगिरहेछन्- अल्लाहको तर्फबाट एउटा प्रतिदान हो । तथा अल्लाहका

فَٱسْتَجَابَ لَهُمْ رَبُّهُمْ أَنِّى لَآ أُضِيعُ عَمَلَ عَٰمِلٍ مِّنكُم مِّن ذَكَرٍ أَوْ أُنثَىٰ ۖ بَعْضُكُم مِّنۢ بَعْضٍ ۖ فَٱلَّذِينَ هَاجَرُوا۟ وَأُخْرِجُوا۟ مِن دِيَٰرِهِمْ وَأُوذُوا۟ فِى سَبِيلِى وَقَٰتَلُوا۟ وَقُتِلُوا۟ لَأُكَفِّرَنَّ عَنْهُمْ سَيِّـَٔاتِهِمْ وَلَأُدْخِلَنَّهُمْ جَنَّٰتٍ تَجْرِى مِن تَحْتِهَا ٱلْأَنْهَٰرُ ثَوَابًا مِّنْ عِندِ ٱللَّهِ ۗ وَٱللَّهُ عِندَهُۥ حُسْنُ ٱلثَّوَابِ ﴿١٩٥﴾

जुनाफमा नै सर्वोत्तम प्रतिदान रहेको छ ।

لَا يَغُرَّنَّكَ تَقَلُّبُ الَّذِيْنَ كَفَرُوْا فِي الْبِلَادِ ﴿١٩٦﴾

१९७. देशमा अविश्वासीहरूको घुमफिरले तिमीलाई धोका नदियोस् ।

مَتَاعٌ قَلِيْلٌ ثُمَّ مَاْوٰىهُمْ جَهَنَّمُ وَبِئْسَ الْمِهَادُ ﴿١٩٧﴾

१९८. (यो) अल्प (र क्षणिक) लाभ मात्र हो, फेरि नर्क तिनीहरूको निवासस्थान नर्क हुनेछ । त्यो कस्तो नराम्रो विश्रामस्थल रहेको छ !

لٰكِنِ الَّذِيْنَ اتَّقَوْا رَبَّهُمْ لَهُمْ جَنّٰتٌ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ خٰلِدِيْنَ فِيْهَا نُزُلًا مِّنْ عِنْدِ اللّٰهِ وَمَا عِنْدَ اللّٰهِ خَيْرٌ لِّلْاَبْرَارِ ﴿١٩٨﴾

१९९. परन्तु जुन व्यक्तिहरू आफ्ना प्रतिपालकदेखि डराउँछन्, तिनीहरूनिम्ति बगैंचाहरू रहेका छन् जसमुनि नहरहरू बगिरहेछन्, त्यहाँ तिनीहरू सदा रहनेछन्– अल्लाहको तर्फबाट आतिथ्यस्वरूप हो । तथा जुन कुरा अल्लाहसँग छ त्यो धर्मनिष्ठहरूका निम्ति अझ उत्तम छ ।

وَاِنَّ مِنْ اَهْلِ الْكِتٰبِ لَمَنْ يُّؤْمِنُ بِاللّٰهِ وَمَآ اُنْزِلَ اِلَيْكُمْ وَمَآ اُنْزِلَ اِلَيْهِمْ خٰشِعِيْنَ لِلّٰهِ لَا يَشْتَرُوْنَ بِاٰيٰتِ اللّٰهِ ثَمَنًا قَلِيْلًا اُولٰٓئِكَ لَهُمْ اَجْرُهُمْ عِنْدَ رَبِّهِمْ اِنَّ اللّٰهَ سَرِيْعُ الْحِسَابِ ﴿١٩٩﴾

२००. तथा निश्चय नै पुस्तकप्राप्त व्यक्तिहरूमध्ये केही यस्ता व्यक्तिहरू छन् जसले अल्लाहप्रति र जुन कुरा तिमीहरूका लागि अवतीर्ण गरिएको छ त्यसप्रति तथा त्यसप्रति (पनि) जुन तिनीहरूप्रति अवतीर्ण गरिएको थियो, विश्वास गर्छन्, अल्लाहका सामु विनम्र रहने गर्छन् । तिनीहरू अल्लाहका चिह्नहरूका सट्टामा तुच्छ मूल्य लिदैनन् । यिनीहरू नै ती हुन् जसको प्रतिदान तिनीहरूका प्रतिपालककहाँ रहनेछ । निश्चय नै, अल्लाह शीघ्रातिशीघ्र हिसाब लिने गर्छन् ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوا اصْبِرُوْا وَصَابِرُوْا وَرَابِطُوْا وَاتَّقُوا اللّٰهَ لَعَلَّكُمْ تُفْلِحُوْنَ ﴿٢٠٠﴾

२०१. हे विश्वासीजन हो ! धैर्यशाली बन तथा धैर्यधारणमा अग्रसर हुने प्रचेष्टा गर र (आफ्नो) प्रतिरक्षक बन तथा अल्लाहसित डराऊ ताकि तिमीहरू कृतार्थ हुन सक ।

سُورَةُ النِّسَاءِ مَدَنِيَّةٌ وَهِيَ مَعَ الْبَسْمَلَةِ مِائَةٌ وَسَبْعٌ وَسَبْعُونَ آيَةً وَأَرْبَعَةٌ وَعِشْرُونَ رُكُوعًا

## अल्-निसा
(हिजरतपछि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु अल्लाहको नाममा ।

يٰۤاَيُّهَا النَّاسُ اتَّقُوْا رَبَّكُمُ الَّذِيْ خَلَقَكُمْ مِّنْ نَّفْسٍ وَّاحِدَةٍ وَّخَلَقَ مِنْهَا زَوْجَهَا وَبَثَّ مِنْهُمَا رِجَالًا كَثِيْرًا وَّنِسَآءً ۚ وَاتَّقُوا اللّٰهَ الَّذِيْ تَسَآءَلُوْنَ بِهٖ وَالْاَرْحَامَ ؕ اِنَّ اللّٰهَ كَانَ عَلَيْكُمْ رَقِيْبًا ②

२. हे मानिसहरूहो ! आफ्ना प्रतिपालकसँग डराऊ जसले तिमीहरूलाई एउटै प्राणीबाट सृष्टि गरे तथा त्यसैबाट त्यसको जोडी सृष्टि गरे, र ती दुवैबाट धेरै पुरुष तथा महिलाहरूको विस्तार गरे । तथा अल्लाहसँग डराऊ जसको नामलिएर तिमीहरू परस्परमा निवेदन गर्छौ, तथा विशेषतः) नातेदारीको सम्बन्धमा (उनीदेखि डराऊ) । अवश्य नै, अल्लाह तिमीहरूको निरीक्षण गरिरहेछन् ।

وَاٰتُوا الْيَتٰمٰۤى اَمْوَالَهُمْ وَلَا تَتَبَدَّلُوا الْخَبِيْثَ بِالطَّيِّبِ ۪ وَلَا تَاْكُلُوْۤا اَمْوَالَهُمْ اِلٰۤى اَمْوَالِكُمْ ؕ اِنَّهٗ كَانَ حُوْبًا كَبِيْرًا ③

३. तथा टुहुराहरूलाई तिनीहरूको सम्पत्ति प्रदान गर र पवित्र वस्तुको सट्टा अपवित्र वस्तु ग्रहण नगर, तथा तिनीहरूको सम्पत्ति आफ्नोसँग मिलाएर भक्षण नगर । निश्चय नै, यो एउटा ठूलो पाप हो ।

وَاِنْ خِفْتُمْ اَلَّا تُقْسِطُوْا فِى الْيَتٰمٰى فَانْكِحُوْا مَا طَابَ لَكُمْ مِّنَ النِّسَآءِ مَثْنٰى وَثُلٰثَ وَرُبٰعَ ۚ فَاِنْ خِفْتُمْ اَلَّا تَعْدِلُوْا فَوَاحِدَةً اَوْ مَا مَلَكَتْ اَيْمَانُكُمْ ؕ ذٰلِكَ اَدْنٰۤى اَلَّا تَعُوْلُوْا ④

४. तथा यदि तिमीहरूलाई (समाजलाई युद्धको परिणामस्वरूप बन्न पुगेका) टुहुराहरूको मामिलाका सम्बन्धमा न्याय गर्न नसकिएला भन्ने आशङ्का रहेमा तिमीहरूलाई मन परेका महिलाहरूमध्ये दुइ वा तीन अथवा चारवटीसँग विवाह गर, तथा यदि तिमीहरूले तिनीहरूलाई न्याय प्रदान गर्न सक्दैनौं भन्ने भय रहेमा केवल एउटीसँग अथवा तिमीहरूका दाहिने हातअन्तर्गत रहेकाहरूसँग (मात्र विवाह गर) । तिमीहरूका निम्ति अन्याय गर्नबाट बच्ने यो निकटतम (मार्ग) हो ।

وَاٰتُوا النِّسَآءَ صَدُقٰتِهِنَّ نِحْلَةً ؕ فَاِنْ طِبْنَ لَكُمْ عَنْ شَیْءٍ مِّنْهُ نَفْسًا فَكُلُوْهُ هَنِیْٓـًٔا مَّرِیْٓـًٔا ۝

५. तथा महिलाहरूलाई तिनीहरूको दाइजो (महर) स्वेच्छापूर्वक प्रदान गर । परन्तु यदि तिनीहरूले आफ्ना राजीखुसीका साथ त्यसबाट तिमीहरूलाई एकांश दिए भने त्यसलाई आनन्ददायक र उत्तम ठानी उपभोग गर ।

وَلَا تُؤْتُوا السُّفَهَآءَ اَمْوَالَكُمُ الَّتِیْ جَعَلَ اللّٰهُ لَكُمْ قِیٰمًا وَّارْزُقُوْهُمْ فِیْهَا وَاكْسُوْهُمْ وَقُوْلُوْا لَهُمْ قَوْلًا مَّعْرُوْفًا ۝

६. अल्लाहले तिमीहरूका निम्ति (जीवनको) आधारस्वरूप बनाएको तिमीहरूको सम्पत्तिको दायित्वभार ती व्यक्तिहरूलाई नसुम्प जुन व्यक्तिहरू मानसिक रूपमा त्यसको यथोचित रेखदेख गर्न योग्य छैनन् । अतः तिनीहरूलाई यथोचित रूपमा खुवाऊ, तथा पहिराऊ तथा उदारतापूर्वक तिनीहरूसँग कुरा गर्ने गर* ।

وَابْتَلُوا الْیَتٰمٰی حَتّٰۤی اِذَا بَلَغُوا النِّكَاحَ ۚ فَاِنْ اٰنَسْتُمْ مِّنْهُمْ رُشْدًا فَادْفَعُوْۤا اِلَیْهِمْ اَمْوَالَهُمْ ۚ وَلَا تَاْكُلُوْهَاۤ اِسْرَافًا وَّبِدَارًا اَنْ یَّكْبَرُوْا ؕ وَمَنْ كَانَ غَنِیًّا فَلْیَسْتَعْفِفْ ۚ وَمَنْ كَانَ فَقِیْرًا

७. तथा विवाहयोग्य (उमेर) नहुनञ्जेलसम्म ती टुहुराहरू (को समझ-बुझ) लाई जाँच्ने गर; तत्पश्चात् यदि तिनीहरूमा तिमीहरूले विवेचनशक्ति पाएमा तिनीहरूलाई तिनको सम्पत्ति समर्पण गर; तथा तिनीहरू बालिग होलान् भनी चाँडो-चाँडो र अपव्ययपूर्वक त्यसलाई

---

* टिप्पणी : यहाँ सिङ्गो समाजलाई सम्बोधन गरिएको छ, जहाँसम्म सम्पत्तिको प्रश्न छ त्यो राष्ट्रिय सम्पत्ति भने होइन अपितु ती टुहुराहरूको (सम्पत्ति) हो जसको संख्या युद्धकालमा अत्याधिक बढ्ने गर्छ । निस्सन्देह राष्ट्रिय सम्पत्तिको एउटा ठूलो अंश यसप्रकारको असाधारण अवस्थितिमा समाविष्ट हुन सक्छ । यदि एउटा राष्ट्रले राष्ट्रिय स्तरमा यस्तो सम्पत्तिको रेखदेख नगरी त्यसलाई अनुभवहीन तथा सम्वेदनशील भई आफ्नो सम्पत्ति संचालन गर्न असमर्थ बालकहरूको जिम्मामा छाडी दिएमा अनिवार्यरूपमा सम्पूर्ण राष्ट्रको अर्थतन्त्रमाथि प्रतिकूल प्रभाव पर्न जान्छ । त्यही समस्यालाई समाधान गर्न सिङ्गो राष्ट्रलाई सम्बोधन गरिएको हो तथा यदि प्रश्न तिनीहरूको सम्पत्तिको रहेमा त्यसको यथोचित रेखदेखको जिम्मेवार उसैलाई ठहऱ्याइएको छ । त्यस्ता टुहुराहरू आफ्ना व्यक्तिगत अधिकारहरूबाट स्थायीरूपमा अनधिकृत अथवा बेदखल हुनेछन् भन्ने चाहिँ यसको तात्पर्य कदापि रहेको छैन ।

निम्नलिखित आयत (पद) तथा आयत नम्बर ११ले यसको वास्तविक भावार्थलाई पर्याप्त रूपमा स्पष्ट पार्छ ।

فَلْيَأْكُلْ بِالْمَعْرُوفِ ۚ فَإِذَا دَفَعْتُمْ إِلَيْهِمْ أَمْوَالَهُمْ فَأَشْهِدُوا عَلَيْهِمْ ۚ وَكَفَىٰ بِاللَّهِ حَسِيبًا ⑥

खर्च नगर । तथा जुनव्यक्ति धनी छ त्यसले पूर्णतया परहेज गरोस्; तथा जुन व्यक्ति निर्धन छ त्यसले उचित रूपमा (त्यसबाट) खाओस् । तथा जब तिमीहरू तिनीहरूलाई तिनको सम्पत्ति प्रदान गर्छौ तब तिनीहरूका सामुन्ने साक्षी निर्धारण गर । तथा हिसाब लिनका निम्ति अल्लाह पर्याप्त छन् ।

لِّلرِّجَالِ نَصِيبٌ مِّمَّا تَرَكَ الْوَالِدَانِ وَالْأَقْرَبُونَ وَلِلنِّسَاءِ نَصِيبٌ مِّمَّا تَرَكَ الْوَالِدَانِ وَالْأَقْرَبُونَ مِمَّا قَلَّ مِنْهُ أَوْ كَثُرَ ۚ نَصِيبًا مَّفْرُوضًا ⑦

८. माता-पिता तथा नजिकका नातेदारहरूले जुनुकुरा छाडेर जान्छन् त्यसमा पुरुषहरूका निम्ति एक अंश छ तथा महिलाहरूका निम्ति (पनि) माता-पिता तथा नजिकका नातेदारहरूले जुनकुरा छाडेर जान्छन्, त्यसमा एक अंश रहेको हुन्छ । चाहे त्यो थोरै होस् अथवा धेरै– एउटा निर्धारित अंश

وَإِذَا حَضَرَ الْقِسْمَةَ أُولُو الْقُرْبَىٰ وَالْيَتَامَىٰ وَالْمَسَاكِينُ فَارْزُقُوهُم مِّنْهُ وَقُولُوا لَهُمْ قَوْلًا مَّعْرُوفًا ⑧

९. तथा जब (पैतृक सम्पत्तिको) अंशवण्डाको समयमा (अन्य) नातेदार, तथा टुहुरा तथा दरिद्रहरू उपस्थित हुन्छन् तब त्यसबाट तिनीहरूलाई (पनि केही) प्रदान गर तथा तिनीहरूसँग दया र प्रेमपूर्वक कुरा गर ।

وَلْيَخْشَ الَّذِينَ لَوْ تَرَكُوا مِنْ خَلْفِهِمْ ذُرِّيَّةً ضِعَافًا خَافُوا عَلَيْهِمْ فَلْيَتَّقُوا اللَّهَ وَلْيَقُولُوا قَوْلًا سَدِيدًا ⑨

१०. तथा जुन व्यक्तिहरू आफूपछि आफ्ना दुर्बल सन्तान रहेमा तिनीहरूको के अवस्था होला भनी चिन्तित हुन्छन्, तिनीहरू सर्तक रहून् । अतः तिनीहरू अल्लाहप्रति डराऊन तथा न्यायोचित कुरा गरून् ।

إِنَّ الَّذِينَ يَأْكُلُونَ أَمْوَالَ الْيَتَامَىٰ ظُلْمًا إِنَّمَا يَأْكُلُونَ فِي بُطُونِهِمْ نَارًا ۖ وَسَيَصْلَوْنَ سَعِيرًا ⑩

११. निश्चय नै, ती व्यक्तिहरू जसले अन्यायपूर्वक टुहुराहरूको सम्पत्ति भक्षण गर्छन्, तिनीहरू आफ्ना पेटमा केवल अग्नि भर्छन् तथा तिनीहरू दन्दनाउदो अग्निमा जल्नेछन् ।

يُوصِيكُمُ اللَّهُ فِي أَوْلَادِكُمْ ۖ لِلذَّكَرِ

१२. अल्लाह तिमीहरूलाई आफ्ना

مِثْلُ حَظِّ الْأُنثَيَيْنِ ۚ فَإِن كُنَّ نِسَاءً
فَوْقَ اثْنَتَيْنِ فَلَهُنَّ ثُلُثَا مَا تَرَكَ ۖ وَإِن
كَانَتْ وَاحِدَةً فَلَهَا النِّصْفُ ۚ وَلِأَبَوَيْهِ
لِكُلِّ وَاحِدٍ مِّنْهُمَا السُّدُسُ مِمَّا تَرَكَ
إِن كَانَ لَهُ وَلَدٌ ۚ فَإِن لَّمْ يَكُن لَّهُ
وَلَدٌ وَوَرِثَهُ أَبَوَاهُ فَلِأُمِّهِ الثُّلُثُ ۚ
فَإِن كَانَ لَهُ إِخْوَةٌ فَلِأُمِّهِ السُّدُسُ
مِن بَعْدِ وَصِيَّةٍ يُوصِي بِهَا أَوْ دَيْنٍ ۗ
آبَاؤُكُمْ وَأَبْنَاؤُكُمْ لَا تَدْرُونَ
أَيُّهُمْ أَقْرَبُ لَكُمْ نَفْعًا ۚ فَرِيضَةً مِّنَ
اللَّهِ ۗ إِنَّ اللَّهَ كَانَ عَلِيمًا حَكِيمًا ﴿١١﴾

सन्तानका सम्बन्धमा के हुकुम दिन्छन् भने: एकजना पुरुषलाई दुइवटी महिलाहरूको अंश बराबर अंश प्राप्त हुनेछ; परन्तु यदि (केवल) महिलाहरू रहेमा र दुइवटीभन्दा अधिक (संख्यामा) रहेमा तिनीहरूले (मृतकले) छाडेको अंशबाट दुई-तिहाइ प्राप्त गर्नेछन्; तथा एउटी मात्र महिला रहेमा चाहिँ तिनलाई आधा अंश प्राप्त हुनेछ । तथा उसका माता-पिता प्रत्येकलाई यदि उसको कुनै सन्तान रहेमा उसले छाडेको सम्पत्तिबाट छैटौं भाग प्राप्त हुनेछ; परन्तु उसका कुनै सन्तान नरहेमा र माता-पिता नै सम्पत्तिको वारिस रहेमा उसकी मातालाई तीन भागको एक भाग प्राप्त हुनेछ । तथा उसका दाजुभाइ र दिदी-बहिनी रहेमा, उसकी मातालाई छैटौं भाग प्राप्त हुनेछ । उसको कुनै वसियत जुन उसले वसियत गरेको छ अथवा ऋण रहेका खण्डमा त्यसलाई (चुक्ता) गरेपश्चात् तिमीहरूका पिता र तिमीहरूका सन्तानमध्ये कोचाहिँ लाभका दृष्टिले तिमीहरूको सर्वाधिक निकटमा छ भन्ने कुरा तिमीहरू जान्दैनौ । (यो अंशवण्डा) अल्लाहले निर्धारण गरेका हुन् । अल्लाह निश्चय नै सर्वज्ञ, तत्त्वज्ञ छन् ।

وَلَكُمْ نِصْفُ مَا تَرَكَ أَزْوَاجُكُمْ إِن
لَّمْ يَكُن لَّهُنَّ وَلَدٌ ۚ فَإِن كَانَ لَهُنَّ وَلَدٌ
فَلَكُمُ الرُّبُعُ مِمَّا تَرَكْنَ ۚ مِن بَعْدِ
وَصِيَّةٍ يُوصِينَ بِهَا أَوْ دَيْنٍ ۚ وَلَهُنَّ
الرُّبُعُ مِمَّا تَرَكْتُمْ إِن لَّمْ يَكُن لَّكُمْ
وَلَدٌ ۚ فَإِن كَانَ لَكُمْ وَلَدٌ فَلَهُنَّ
الثُّمُنُ مِمَّا تَرَكْتُم ۚ مِّن بَعْدِ وَصِيَّةٍ
تُوصُونَ بِهَا أَوْ دَيْنٍ ۗ وَإِن كَانَ رَجُلٌ

१३. तथा तिमीहरूका पत्नीहरूले छाडेको सम्पत्तिबाट यदि तिनीहरूका सन्तान नरहेमा तिमीहरूलाई आधा प्राप्त हुनेछ; परन्तु यदि तिनीहरूको सन्तान रहेमा जुन अंश तिनीहरूले छाडेका छन् त्यसबाट तिमीहरूलाई चौथो भाग प्राप्त हुनेछ । तिनीहरूका कुनै वसियत जुन उनीहरूले वसियत गरेको छ अथवा ऋण (चुक्ता) भएपश्चात् तथा यदि तिमीहरूका सन्तान नरहेमा तिमीहरूले छाडेको (सम्पत्तिबाट) बाट तिनीहरूलाई चौथो भाग प्राप्त हुनेछ; परन्तु यदि तिमीहरूको कुनै

सन्तान रहेमा, तिमीहरूको कुनै वसियत जुन तिमीहरूले वसियत गरेका छौ अथवा ऋण (चुक्ता) गरेपश्चात् तिमीहरूले छाडेको (सम्पत्ति)बाट तिनीहरूलाई आठौं भाग प्राप्त हुन्छ । तथा जुन पुरुष अथवा महिलाको अंशवण्डा गरिन्छ यदि त्यसका माता-पिता र सन्तान भने नरहेका तर कुनै भाइ अथवा बहिनी रहेका भएमा तिनीहरू प्रत्येकलाई छैठौं भाग प्राप्त हुनेछ । परन्तु यदि तिनीहरू त्यसभन्दा अधिक संख्यामा रहेमा सबै (समानरूपले) तेस्रो भागका भागीदार हुनेछन् । गर्नुपर्ने वसियत जुन वसियत गरिएको छ अथवा ऋण (चुक्ता) गरेपश्चात्, कसैलाई दुःख (दिने अभिप्राय) नराखी -यो) अल्लाहको तर्फबाट वसियत हो, तथा अल्लाह सर्वज्ञ, परम सहनशील छन् ।

يُّوْرَثُ كَلٰلَةً اَوِامْرَاَةٌ وَّلَهٗٓ اَخٌ اَوْ اُخْتٌ فَلِكُلِّ وَاحِدٍ مِّنْهُمَا السُّدُسُ ۚ فَاِنْ كَانُوْٓا اَكْثَرَ مِنْ ذٰلِكَ فَهُمْ شُرَكَآءُ فِي الثُّلُثِ مِنْۢ بَعْدِ وَصِيَّةٍ يُّوْصٰى بِهَآ اَوْ دَيْنٍ ۙ غَيْرَ مُضَآرٍّ ۚ وَصِيَّةً مِّنَ اللّٰهِ ۗ وَاللّٰهُ عَلِيْمٌ حَلِيْمٌ ﴿١٢﴾

१४. यी अल्लाहद्वारा (निर्धारित) सीमाहरू हुन् तथा जसले अल्लाह र उनका सन्देशवाहकको आज्ञापालन गर्छ, त्यसलाई उनले त्यस बगैंचामा दाखिल गर्नेछन् जसमनि नहरहरू बगिरहेछन् त्यहाँ नै तिनीहरू सदा रहनेछन्, तथा त्यो एउटा ठूलो सफलता हो ।

تِلْكَ حُدُوْدُ اللّٰهِ ۗ وَمَنْ يُّطِعِ اللّٰهَ وَرَسُوْلَهٗ يُدْخِلْهُ جَنّٰتٍ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ خٰلِدِيْنَ فِيْهَا ۗ وَذٰلِكَ الْفَوْزُ الْعَظِيْمُ ﴿١٣﴾

१५. तथा जसले अल्लाह र उनका सन्देशवाहकको अवज्ञा गर्छ तथा उनका सीमाहरूको उल्लङ्घन गर्छ त्यसलाई उनले अग्निमा दाखिल गर्नेछन् त्यहाँ नै त्यो रहनेछ, तथा त्यसका निम्ति एउटा अपमानजक दण्ड रहेको छ ।

وَمَنْ يَّعْصِ اللّٰهَ وَرَسُوْلَهٗ وَيَتَعَدَّ حُدُوْدَهٗ يُدْخِلْهُ نَارًا خَالِدًا فِيْهَا ۖ وَلَهٗ عَذَابٌ مُّهِيْنٌ ﴿١٤﴾

१६. तिमीहरूका स्त्रीहरूमध्ये जो दुराचरणका दोषी छन् तिनीहरूविरुद्ध तिमीहरूमध्ये चारजना साक्षी खडा गर, अतः यदि तिनीहरूले साक्षी दिए भने, उनीहरूलाई तबसम्म घरमा नजरबन्द गरेर राख जबसम्म तिनीहरूको मरण आउँदैन

وَالّٰتِيْ يَاْتِيْنَ الْفَاحِشَةَ مِنْ نِّسَآئِكُمْ فَاسْتَشْهِدُوْا عَلَيْهِنَّ اَرْبَعَةً مِّنْكُمْ ۚ فَاِنْ شَهِدُوْا فَاَمْسِكُوْهُنَّ فِي الْبُيُوْتِ حَتّٰى يَتَوَفّٰهُنَّ الْمَوْتُ اَوْ يَجْعَلَ اللّٰهُ لَهُنَّ سَبِيْلًا ﴿١٥﴾

अथवा अल्लाहले तिनीहरूका निम्ति कुनै मार्ग खोल्दैनन् ।

१७. तथा यदि तिमीहरूमध्ये दुईजना पुरुष त्यस्तो कार्यको दोषी पाइएमा तिनीहरू दुबैलाई दण्ड देऊ, तथा यदि तिनीहरूले प्रायश्चित गरे र आफूलाई सुधार गरे भने तिनीहरूलाई छाडिदेऊ, अल्लाह निश्चय नै बारम्बार प्रायश्चित स्वीकारकर्ता (तथा) परम दयालु छन् ।

وَالَّذٰنِ يَأْتِيٰنِهَا مِنْكُمْ فَاٰذُوْهُمَا ۚ فَاِنْ تَابَا وَاَصْلَحَا فَاَعْرِضُوْا عَنْهُمَا ۗ اِنَّ اللّٰهَ كَانَ تَوَّابًا رَّحِيْمًا ﴿١٦﴾

१८. अवश्य नै, अल्लाहले केवल ती व्यक्तिहरूको प्रायश्चित स्वीकार गर्ने गर्छन् जसले अज्ञानताका कारण दुष्कर्म गर्छन् तथा तत्कालै प्रायश्चित गरिहाल्छन् । ती उनीहरू नै हुन् जसप्रति अल्लाहले बारम्बार करुणा गर्ने गर्छन्, तथा अल्लाह सर्वज्ञ, तत्त्वज्ञ छन् ।

اِنَّمَا التَّوْبَةُ عَلَى اللّٰهِ لِلَّذِيْنَ يَعْمَلُوْنَ السُّوْٓءَ بِجَهَالَةٍ ثُمَّ يَتُوْبُوْنَ مِنْ قَرِيْبٍ فَاُولٰٓئِكَ يَتُوْبُ اللّٰهُ عَلَيْهِمْ ۗ وَكَانَ اللّٰهُ عَلِيْمًا حَكِيْمًا ﴿١٧﴾

१९. जसले (निरन्तर) दुष्कर्म गर्ने गर्छन् ती व्यक्तिहरूको प्रायश्चित (ग्रहण) हुँदैन तथा जब तिनीहरूमध्ये कसैको मृत्यु हुन लाग्छ तब उसले भन्छ, "अब मैले प्रायश्चित गरें" न त ती व्यक्तिहरूको जो अविश्वासी रहेका अवस्थामा मर्छन् । तिनीहरूको नै प्रायश्चित स्वीकारिन्छ । ती उनीहरूनै हुन् जसका निम्ति हामीले पीडादायक दण्ड तयार गरेका छौं ।

وَلَيْسَتِ التَّوْبَةُ لِلَّذِيْنَ يَعْمَلُوْنَ السَّيِّاٰتِ ۚ حَتّٰٓى اِذَا حَضَرَ اَحَدَهُمُ الْمَوْتُ قَالَ اِنِّيْ تُبْتُ الْـٰٔنَ وَلَا الَّذِيْنَ يَمُوْتُوْنَ وَهُمْ كُفَّارٌ ۗ اُولٰٓئِكَ اَعْتَدْنَا لَهُمْ عَذَابًا اَلِيْمًا ﴿١٨﴾

२०. हे विश्वासीजन हो ! महिलाहरूको इच्छा विपरित तिनीहरूको वारिस बन्नु तिमीहरूका निम्ति वैधानिक हुनेछैन । अतः तिनीहरू कुनै जघन्य दुष्कर्मका दोषी प्रमाणित नभएसम्म तिमीहरूले तिनीहरूलाई दिएको सम्पत्तिबाट एकांश हत्याउनका निम्ति तिनीहरूलाई अन्यायपूर्वक रोकेर नराख, तथा तिनीहरूसँग न्यायोचित व्यवहार गर, तथा यदि तिमीहरूले तिनीहरूलाई मन

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا لَا يَحِلُّ لَكُمْ اَنْ تَرِثُوا النِّسَآءَ كَرْهًا ۗ وَلَا تَعْضُلُوْهُنَّ لِتَذْهَبُوْا بِبَعْضِ مَآ اٰتَيْتُمُوْهُنَّ اِلَّآ اَنْ يَّاْتِيْنَ بِفَاحِشَةٍ مُّبَيِّنَةٍ ۚ وَعَاشِرُوْهُنَّ بِالْمَعْرُوْفِ ۚ فَاِنْ كَرِهْتُمُوْهُنَّ فَعَسٰٓى اَنْ تَكْرَهُوْا شَيْـًٔا وَّيَجْعَلَ اللّٰهُ فِيْهِ خَيْرًا كَثِيْرًا ﴿١٩﴾

नपराएमा, सम्भव छ जुन कुरालाई तिमीहरू मन पराउँदैनौ अल्लाहले त्यसमा प्रशस्त असल कुराको सिर्जना गरेका हुन् ।

२१. तथा यदि तिमीहरू एउटी पत्नीका स्थानमा अर्की पत्नी अपनाउन चाहन्छौं भने र प्रशस्त धन तिनीहरूमध्ये एउटी पत्नीलाई प्रदान गरिसकेकाछौ त्यसबाट पटक्कै नलेऊ । के तिमीहरू त्यसलाई मिथ्या (बोलेर) तथा खुल्लमखुल्ला पापका साथ लिन्छौ र?

وَإِنْ أَرَدْتُّمُ اسْتِبْدَالَ زَوْجٍ مَّكَانَ زَوْجٍ ۙ وَّآتَيْتُمْ إِحْدٰىهُنَّ قِنْطَارًا فَلَا تَأْخُذُوْا مِنْهُ شَيْئًا ۚ أَتَأْخُذُوْنَهٗ بُهْتَانًا وَّإِثْمًا مُّبِيْنًا ﴿٢٠﴾

२२. तथा जब तिमीहरूमध्ये एकको अर्कासित परस्पर एकान्तमा मिलन भइसकेको छ तथा तिनीहरूले (महिलाहरूले) तिमीहरूबाट दृढवचन लिइसकेका छन् भने, कसरी तिमीहरू त्यसलाई लिन सक्छौ र?

وَكَيْفَ تَأْخُذُوْنَهٗ وَقَدْ أَفْضٰى بَعْضُكُمْ إِلٰى بَعْضٍ وَّأَخَذْنَ مِنْكُمْ مِّيْثَاقًا غَلِيْظًا ﴿٢١﴾

२३. तथा ती महिलाहरूसँग विवाह नगर जसलाई तिमीहरूका पिताहरूले विवाह गरिसकेका छन्, परन्तु अतीतमा जो भयो सो भयो । यो एउटा अपवित्र र घृणित कार्य तथा एउटा कुमार्ग पनि हो ।

وَلَا تَنْكِحُوْا مَا نَكَحَ آبَاؤُكُمْ مِّنَ النِّسَاءِ إِلَّا مَا قَدْ سَلَفَ ۚ إِنَّهٗ كَانَ فَاحِشَةً وَّمَقْتًا ۚ وَسَاءَ سَبِيْلًا ﴿٢٢﴾

२४. तिमीहरूका निम्ति अवैध ठहऱ्याइएका छन् तिमीहरूकी माताहरू, तथा तिमीहरूका छोरीहरू तथा तिमीहरूका बहिनीहरू **तथा** तिमीहरूका फुपूहरू तथा तिमीहरूका सानीमाहरू र भतिजीहरू, तथा भान्जीहरू तथा तिमीहरूका (धाई) आमाहरू जसले तिमीहरूलाई दूध चुसाएका छन् तथा तिमीहरूका धाईबहिनीहरू र तिमीहरूका सासूहरू तथा तिमीहरूका ती भट्केला छोरीहरू जुन तिमीहरूका ती पत्नीहरूका तर्फबाट पालिएका हुन्, जससँग तिमीहरूको एकान्त मिलन भइसकेको छ । परन्तु यदि तिमीहरूको तिनीहरूसँग मिलन

حُرِّمَتْ عَلَيْكُمْ أُمَّهٰتُكُمْ وَبَنٰتُكُمْ وَأَخَوٰتُكُمْ وَعَمّٰتُكُمْ وَخٰلٰتُكُمْ وَبَنٰتُ الْأَخِ وَبَنٰتُ الْأُخْتِ وَأُمَّهٰتُكُمُ الّٰتِيْ أَرْضَعْنَكُمْ وَأَخَوٰتُكُمْ مِّنَ الرَّضَاعَةِ وَأُمَّهٰتُ نِسَائِكُمْ وَرَبَائِبُكُمُ الّٰتِيْ فِيْ حُجُوْرِكُمْ مِّنْ نِّسَائِكُمُ الّٰتِيْ دَخَلْتُمْ بِهِنَّ ۖ فَإِنْ لَّمْ تَكُوْنُوْا دَخَلْتُمْ بِهِنَّ فَلَا جُنَاحَ عَلَيْكُمْ ۖ وَحَلَائِلُ أَبْنَائِكُمُ الَّذِيْنَ مِنْ أَصْلَابِكُمْ ۙ وَأَنْ تَجْمَعُوْا بَيْنَ الْأُخْتَيْنِ إِلَّا مَا قَدْ سَلَفَ ۗ إِنَّ اللّٰهَ كَانَ غَفُوْرًا رَّحِيْمًا ﴿٢٣﴾

नभएको भएमा भने तिमीहरूप्रति कुनै पाप लाग्नेछैन– तथा तिमीहरूका औरस पुत्रहरूका पत्नीहरू, तथा दुई दिदीबहिनीलाई एकैसाथ (विवाह) गर्न पनि (तिमीहरूका लागि अवैध (निषिद्ध) ठहऱ्याइएको छ) । परन्तु अतीतमा जे भयो, सो भयो । निश्चय नै, अल्लाह परम क्षमाशील, परम दानशील छन् ।

وَّالْمُحْصَنٰتُ مِنَ النِّسَآءِ اِلَّا مَا مَلَكَتْ اَيْمَانُكُمْ ۚ كِتٰبَ اللّٰهِ عَلَيْكُمْ ۚ وَاُحِلَّ لَكُمْ مَّا وَرَآءَ ذٰلِكُمْ اَنْ تَبْتَغُوْا بِاَمْوَالِكُمْ مُّحْصِنِيْنَ غَيْرَ مُسٰفِحِيْنَ ۗ فَمَا اسْتَمْتَعْتُمْ بِهٖ مِنْهُنَّ فَاٰتُوْهُنَّ اُجُوْرَهُنَّ فَرِيْضَةً ۗ وَلَا جُنَاحَ عَلَيْكُمْ فِيْمَا تَرٰضَيْتُمْ بِهٖ مِنْۢ بَعْدِ الْفَرِيْضَةِ ۗ اِنَّ اللّٰهَ كَانَ عَلِيْمًا حَكِيْمًا ﴿٢٤﴾

२५. तथा विवाहित महिलाहरू (पनि तिमीहरूका निम्ति अवैध ठहऱ्याइएका छन्,) सिवाय ती महिलाहरू जुन तिमीहरूका दाहिने हातका अधीनस्थ छन् । तिमीहरूप्रति यो (आदेश) अल्लाहले निर्धारण गरेका छन् । यिनीहरूबाहेक ती सबै तिमीहरूका निम्ति वैध हुनेछन्, जसलाई तिमीहरू आफ्नो सम्पत्ति खर्च गरी प्राप्त गर्न चाहन्छौ, वैधानिक विवाह गरी व्यभिचार गर्ने इच्छाले होइन । तथा तिनीहरूबाट तिमीहरूले प्राप्त गरेको फाइदाका सट्टामा तिनीहरूलाई पूर्व निर्धारित दाइजो (महर) प्रदान गर, तथा (दाइजो) निर्धारित भएपश्चात्, जुन कुराप्रति तिमीहरू परस्पर सहमत हुन्छौ त्यसमा तिमीहरूलाई कुनै पाप लाग्नेछैन । निश्चय नै अल्लाह सर्वज्ञ, तत्त्वज्ञ छन् ।

وَمَنْ لَّمْ يَسْتَطِعْ مِنْكُمْ طَوْلًا اَنْ يَّنْكِحَ الْمُحْصَنٰتِ الْمُؤْمِنٰتِ فَمِنْ مَّا مَلَكَتْ اَيْمَانُكُمْ مِّنْ فَتَيٰتِكُمُ الْمُؤْمِنٰتِ ۗ وَاللّٰهُ اَعْلَمُ بِاِيْمَانِكُمْ ۗ بَعْضُكُمْ مِّنْۢ بَعْضٍ ۚ فَانْكِحُوْهُنَّ بِاِذْنِ اَهْلِهِنَّ وَاٰتُوْهُنَّ اُجُوْرَهُنَّ بِالْمَعْرُوْفِ مُحْصَنٰتٍ غَيْرَ مُسٰفِحٰتٍ وَّلَا مُتَّخِذٰتِ اَخْدَانٍ ۚ فَاِذَآ اُحْصِنَّ

२६. तथा तिमीहरूमध्ये जुन व्यक्ति स्वाधीन विश्वासी महिलासँग विवाह गर्न सामर्थ्यवान् छैन, (उसले) तिमीहरूका दाहिने हात अधीनस्थ अर्थात् विश्वासी दासीहरूसँग विवाह गरोस् । तथा अल्लाहले तिमीहरूको विश्वासलाई सर्वाधिक जान्दछन्, तिमीहरू (सबै) परस्पर सम्बन्धित छौ, त्यसकारण तिनीहरूसँग तिनीहरूका मालिकको अनुमति लिएर विवाह गर । तथा तिनीहरू पवित्र रहेका अवस्थामा र व्यभिचारमा लिप्त तथा

فَإِنْ أَتَيْنَ بِفَاحِشَةٍ فَعَلَيْهِنَّ نِصْفُ مَا عَلَى الْمُحْصَنَاتِ مِنَ الْعَذَابِ ۚ ذَٰلِكَ لِمَنْ خَشِيَ الْعَنَتَ مِنْكُمْ ۚ وَأَنْ تَصْبِرُوا خَيْرٌ لَكُمْ ۗ وَاللَّهُ غَفُورٌ رَحِيمٌ ﴿٢٦﴾

गुप्तयार (अवैधप्रेमी) नराखेको अवस्था भएमा तिनीहरूलाई दस्तुरअनुसार दाइजो (महर) प्रदान गर । तथा विवाहपश्चात् यदि तिनीहरू कुनै प्रकारका निर्लज्जताका दोषी पाइएमा तिनीहरूको दण्ड स्वाधीन महिलाहरूका निम्ति निर्धारित दण्डको आधा हुनेछ । यो तिमीहरूमध्ये त्यसका निम्ति हो जुन व्यक्ति पापको भागी हुनबाट डराऊँछ तथा आत्मसंयम गर्नमा नै तिमीहरूको भलाइ हुनेछ, तथा अल्लाह परम क्षमाशील, परम दानशील छन् ।

يُرِيدُ اللَّهُ لِيُبَيِّنَ لَكُمْ وَيَهْدِيَكُمْ سُنَنَ الَّذِينَ مِنْ قَبْلِكُمْ وَيَتُوبَ عَلَيْكُمْ ۗ وَاللَّهُ عَلِيمٌ حَكِيمٌ ﴿٢٧﴾

२७. अल्लाह तिमीहरूका निम्ति स्पष्ट वर्णन गर्न तथा तिमीहरूलाई ती व्यक्तिहरूका मार्गतर्फ जुन तिमीहरूभन्दा पहिला थिए मार्गदर्शन गर्न र तिमीहरूप्रति बारम्बार करुणा गर्न चाहन्छन् । तथा अल्लाह सर्वज्ञ, तत्त्वज्ञ छन् ।

وَاللَّهُ يُرِيدُ أَنْ يَتُوبَ عَلَيْكُمْ وَيُرِيدُ الَّذِينَ يَتَّبِعُونَ الشَّهَوَاتِ أَنْ تَمِيلُوا مَيْلًا عَظِيمًا ﴿٢٨﴾

२८. तथा अल्लाह तिमीहरूप्रति बारम्बार करुणा गर्न चाहन्छन्, परन्तु जसले -आफ्ना) तुच्छ आकाङ्क्षाहरूको अनुसरण गर्छन्, ती व्यक्तिहरू तिमीहरू पूर्णत विपथगामी बन भन्ने इच्छा गर्छन् ।

يُرِيدُ اللَّهُ أَنْ يُخَفِّفَ عَنْكُمْ ۚ وَخُلِقَ الْإِنْسَانُ ضَعِيفًا ﴿٢٩﴾

२९. तथा अल्लाह तिमीहरूको बोझ हलुको गर्न चाहन्छन्, कारण मानिसलाई (एक) दुर्बल (प्राणीको रूपमा) सृष्टि गरिएको छ ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا لَا تَأْكُلُوا أَمْوَالَكُمْ بَيْنَكُمْ بِالْبَاطِلِ إِلَّا أَنْ تَكُونَ تِجَارَةً عَنْ تَرَاضٍ مِنْكُمْ ۚ وَلَا تَقْتُلُوا أَنْفُسَكُمْ ۚ إِنَّ اللَّهَ كَانَ بِكُمْ رَحِيمًا ﴿٣٠﴾

३०. हे विश्वासीजन हो ! परस्पर राजी खुशीका साथ गरिएको व्यापारद्वारा (तिमीहरूले आर्जन गर्ने) बाहेक अन्यायपूर्ण तरीकाले तिमीहरू एक अर्काको सम्पत्ति हत्याउने नगर । तथा आफूले आफैंलाई हत्या नगर । निश्चय नै, अल्लाह तिमीहरूप्रति करुणाशील छन् ।

وَمَنْ يَفْعَلْ ذَٰلِكَ عُدْوَانًا وَظُلْمًا

३१. तथा जुन व्यक्तिले आज्ञा उलङ्घन र

فَسَوْفَ نُصْلِيهِ نَارًا ۚ وَكَانَ ذَٰلِكَ عَلَى اللَّهِ يَسِيرًا ٣١

अन्यायको मार्ग अपनाएर त्यसो गर्छ, त्यसलाई हामी अग्निमा हाल्नेछौं, तथा यो अल्लाहका निम्ति सहजकार्य हो ।

إِن تَجْتَنِبُوا كَبَائِرَ مَا تُنْهَوْنَ عَنْهُ نُكَفِّرْ عَنكُمْ سَيِّئَاتِكُمْ وَنُدْخِلْكُم مُّدْخَلًا كَرِيمًا ٣٢

३२. जुन कुराहरू तिमीहरूका निम्ति निषेधित छन् तिनीहरूमध्ये जघन्य कुराहरूबाट तिमीहरू जोगिएमा, हामी तिमीहरूका (सानातिना) पापहरू मोचन गर्नेछौं तथा तिमीहरूलाई अति सम्मानित स्थानमा प्रवेश गराउनेछौं ।

وَلَا تَتَمَنَّوْا مَا فَضَّلَ اللَّهُ بِهِ بَعْضَكُمْ عَلَىٰ بَعْضٍ ۚ لِّلرِّجَالِ نَصِيبٌ مِّمَّا اكْتَسَبُوا ۖ وَلِلنِّسَاءِ نَصِيبٌ مِّمَّا اكْتَسَبْنَ ۚ وَاسْأَلُوا اللَّهَ مِن فَضْلِهِ ۗ إِنَّ اللَّهَ كَانَ بِكُلِّ شَيْءٍ عَلِيمًا ٣٣

३३. अल्लाहले जुन कुरामा तिमीहरूमध्ये केहीलाई अन्य व्यक्तिहरूको तुलनामा श्रेष्ठता प्रदान गरेका छन्, त्यसप्रति लालायित नहोऊ ! पुरुषहरूले जे जति कमाएका छन्, त्यसमा तिनीहरूको अंश रहनेछ, तथा महिलाहरूले जे जति कमाएका छन् त्यसमा तिनीहरूको अंश रहनेछ । तथा अल्लाहसँग उनको अनुग्रहको याचना गर । निश्चय नै, सम्पूर्ण कुराहरूबारे अल्लाहको पूर्णज्ञान रहेको छ ।

وَلِكُلٍّ جَعَلْنَا مَوَالِيَ مِمَّا تَرَكَ الْوَالِدَانِ وَالْأَقْرَبُونَ ۚ وَالَّذِينَ عَقَدَتْ أَيْمَانُكُمْ فَآتُوهُمْ نَصِيبَهُمْ ۚ إِنَّ اللَّهَ كَانَ عَلَىٰ كُلِّ شَيْءٍ شَهِيدًا ٣٤

३४. तथा प्रत्येक व्यक्तिका निम्ति माता-पिता, तथा नातेदारहरूले छाडेर जाने वस्तुका लागि हामीले वारिस निर्धारण गरेका छौं । तथा ती व्यक्तिहरू पनि जससँग तिमीहरूले वाचा बन्धन गरिसकेका छौ । उनीहरूले अतः तिनीहरूलाई उनीहरूको अंश भाग प्रदान गर । अवश्यमेव अल्लाह प्रत्येक वस्तुहरूमाथि निगरानी राख्छन् ।

الرِّجَالُ قَوَّامُونَ عَلَى النِّسَاءِ بِمَا فَضَّلَ اللَّهُ بَعْضَهُمْ عَلَىٰ بَعْضٍ وَبِمَا أَنفَقُوا مِنْ أَمْوَالِهِمْ ۚ فَالصَّالِحَاتُ قَانِتَاتٌ حَافِظَاتٌ لِّلْغَيْبِ بِمَا حَفِظَ اللَّهُ ۚ وَاللَّاتِي تَخَافُونَ نُشُوزَهُنَّ فَعِظُوهُنَّ وَاهْجُرُوهُنَّ

३५. पुरुषहरू महिलाहरूका संरक्षक हुन्, कारण अल्लाहले तिनीहरूमध्ये केहीलाई अन्य व्यक्तिहरूमाथि प्राधान्यता प्रदान गरेका छन् तथा किनभने तिनीहरूले (पुरुषहरूले) आफ्नो धन खर्च गर्छन् । अतः गुणवती महिलाहरू (तिनै हुन् जसले) आज्ञापालन गर्छन् तथा अल्लाहको मद्दतले

فِي الْمَضَاجِعِ وَاضْرِبُوهُنَّ ۚ فَإِنْ
أَطَعْنَكُمْ فَلَا تَبْغُوا عَلَيْهِنَّ سَبِيلًا ۗ إِنَّ
اللَّهَ كَانَ عَلِيًّا كَبِيرًا ﴿٣٥﴾

(आफ्ना पतिहरूका) गुप्त कुराहरूको संरक्षण गर्छन् । तथा जसका (बारेमा) आज्ञा उल्लङ्घनको तिमीहरूलाई आशङ्का रहेको छ, तिनीहरूलाई सम्झाऊ तथा उनीहरूलाई उनीहरूका शयनकक्षमा नै एक्लै छाडी देऊ, र तिनीहरूलाई (सुधारका निम्ति) सास्ती देऊ । त्यसपछि यदि तिनीहरूले तिमीहरूको आज्ञापालन गरे भने तिनीहरूकाविरुद्ध कुनै बहाना नखोज । निश्चय नै, अल्लाह उच्च, महान छन् ।

وَإِنْ خِفْتُمْ شِقَاقَ بَيْنِهِمَا فَابْعَثُوا
حَكَمًا مِّنْ أَهْلِهِ وَحَكَمًا مِّنْ أَهْلِهَا ۚ إِنْ
يُرِيدَا إِصْلَاحًا يُوَفِّقِ اللَّهُ بَيْنَهُمَا ۗ
إِنَّ اللَّهَ كَانَ عَلِيمًا خَبِيرًا ﴿٣٦﴾

३६. तथा यदि तिमीहरूलाई तिनीहरू बीचको सम्बन्ध बिच्छेद हुने आशङ्का रहेमा त्यस पुरुषका परिवारबाट तथा त्यस महिलाका परिवारबाट एक एकजना मध्यस्थकर्ता नियुक्त गर । यदि तिनीहरूले मेलमिलाप गराउन चाहेमा अल्लाहले ती दुई (पक्ष) बीचको मध्यस्थतालाई फलदायक तुल्याउने छन् । निश्चय नै, अल्लाह सर्वज्ञ, सर्वद्रष्टा छन् ।

وَاعْبُدُوا اللَّهَ وَلَا تُشْرِكُوا بِهِ شَيْئًا ۖ وَ
بِالْوَالِدَيْنِ إِحْسَانًا وَبِذِي الْقُرْبَىٰ وَ
الْيَتَامَىٰ وَالْمَسَاكِينِ وَالْجَارِ ذِي الْقُرْبَىٰ وَ
الْجَارِ الْجُنُبِ وَالصَّاحِبِ بِالْجَنبِ وَابْنِ
السَّبِيلِ وَمَا مَلَكَتْ أَيْمَانُكُمْ ۗ إِنَّ اللَّهَ
لَا يُحِبُّ مَن كَانَ مُخْتَالًا فَخُورًا ﴿٣٧﴾

३७. तथा अल्लाहको उपासना गर तथा कसैलाई उनको समतुल्य नबनाऊ, तथा माता-पितासँग सद्व्यवहार गर तथा नातेदार, तथा टुहुराहरू तथा दरिद्रहरू र सगोत्री छिमेकीहरू तथा विराना छिमेकीहरू तथा (आफ्ना) निकटस्थ व्यक्तिहरू र पथिकहरू तथा तिनीहरूसँग, जसका मालिक तिमीहरूका दाहिने हात रहेका छन् । निश्चय नै, अल्लाहले दाम्भिक (तथा) अहङ्कारी व्यक्तिहरूलाई मन पराउँदैनन् ।

الَّذِينَ يَبْخَلُونَ وَيَأْمُرُونَ النَّاسَ
بِالْبُخْلِ وَيَكْتُمُونَ مَا آتَاهُمُ اللَّهُ مِن
فَضْلِهِ ۗ وَأَعْتَدْنَا لِلْكَافِرِينَ عَذَابًا
مُّهِينًا ﴿٣٨﴾

३८. जो आफू (पनि) कन्जुसी गर्ने गर्छन् तथा अरूलाई (पनि) कन्जुसी गर्ने परामर्श दिन्छन् र अल्लाहले आफ्नो कृपाद्वारा जुन कुरा तिनीहरूलाई प्रदान गरेका छन् त्यसलाई लुकाउँछन् । तथा अविश्वासीहरूका निम्ति हामीले अपमानजनक दण्ड तयार गरेका

छौं ।

وَ الَّذِيْنَ يُنْفِقُوْنَ اَمْوَالَهُمْ رِئَآءَ النَّاسِ وَ لَا يُؤْمِنُوْنَ بِاللّٰهِ وَلَا بِالْيَوْمِ الْاٰخِرِ ؕ وَ مَنْ يَّكُنِ الشَّيْطٰنُ لَهٗ قَرِيْنًا فَسَآءَ قَرِيْنًا ﴿۳۸﴾

३९. तथा तिनीहरूका निम्ति, जसले आफ्नो सम्पत्ति मानिसहरूलाई देखाउनका निम्ति खर्च गर्छन्, तथा अल्लाहप्रति र "अन्तिम दिन" प्रति विश्वास गर्दैनन् । तथा जसले सैतानलाई आफ्नो मित्र बनाएको छ (त्यस व्यक्तिले के स्मरण राखोस् भने), त्यो एउटा अति नराम्रो मित्र हो ।

وَ مَاذَا عَلَيْهِمْ لَوْ اٰمَنُوْا بِاللّٰهِ وَ الْيَوْمِ الْاٰخِرِ وَ اَنْفَقُوْا مِمَّا رَزَقَهُمُ اللّٰهُ ؕ وَ كَانَ اللّٰهُ بِهِمْ عَلِيْمًا ﴿۳۹﴾

४०. तथा यदि तिनीहरूले अल्लाहप्रति र अन्तिम दिनप्रति विश्वास गर्थे तथा अल्लाहले तिनीहरूलाई जुन कुरा प्रदान गरेका छन्, त्यसबाट खर्च गर्थे भने तिनीहरूमाथि के( हानि) आइलाग्थ्यो र? तथा अल्लाहले तिनीहरूलाई राम्ररी जान्दछन् ।

اِنَّ اللّٰهَ لَا يَظْلِمُ مِثْقَالَ ذَرَّةٍ ۚ وَ اِنْ تَكُ حَسَنَةً يُّضٰعِفْهَا وَ يُؤْتِ مِنْ لَّدُنْهُ اَجْرًا عَظِيْمًا ﴿۴۰﴾

४१. निश्चय नै, अल्लाहले (कसैमाथि) एक अणु बराबर (पनि) अन्याय गर्दैनन् । तथा यदि कुनै पुण्य कार्य रहेमा त्यसलाई उनले बढाउँछन् र आफ्ना जुनाफबाट ठूलो प्रतिदान प्रदान गर्छन् ।

فَكَيْفَ اِذَا جِئْنَا مِنْ كُلِّ اُمَّةٍۭ بِشَهِيْدٍ وَّ جِئْنَا بِكَ عَلٰى هٰۤؤُلَآءِ شَهِيْدًا ﴿۴۱﴾

४२. तथा (त्यस समय तिनीहरूको) के (अवस्था) हुनेछ जब हामी प्रत्येक सम्प्रदायबाट एकजना साक्षी ल्याउनेछौं तथा तिमीलाई यिनीहरूविरुद्ध साक्षीस्वरूप उपस्थित गर्नेछौं !

يَوْمَئِذٍ يَّوَدُّ الَّذِيْنَ كَفَرُوْا وَ عَصَوُا الرَّسُوْلَ لَوْ تُسَوّٰى بِهِمُ الْاَرْضُ ؕ وَ لَا يَكْتُمُوْنَ اللّٰهَ حَدِيْثًا ﴿۴۲﴾

४३. त्यस दिन ती व्यक्तिहरू जसले अविश्वास गरेका छन् तथा सन्देशवाहकको अवज्ञा गरेका छन् धर्तीलाई तिनीहरूसँग बराबर पारिदिए हुन्थ्यो भन्ने इच्छा गर्छन् तथा अल्लाहबाट तिनीहरूले केही कुरा गुप्त राख्नसक्नेछैनन् ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا لَا تَقْرَبُوا
الصَّلَاةَ وَأَنتُمْ سُكَارَىٰ حَتَّىٰ
تَعْلَمُوا مَا تَقُولُونَ وَلَا جُنُبًا إِلَّا
عَابِرِي سَبِيلٍ حَتَّىٰ تَغْتَسِلُوا ۚ وَإِن
كُنتُم مَّرْضَىٰ أَوْ عَلَىٰ سَفَرٍ أَوْ جَاءَ
أَحَدٌ مِّنكُم مِّنَ الْغَائِطِ أَوْ لَامَسْتُمُ
النِّسَاءَ فَلَمْ تَجِدُوا مَاءً فَتَيَمَّمُوا
صَعِيدًا طَيِّبًا فَامْسَحُوا بِوُجُوهِكُمْ وَ
أَيْدِيكُمْ ۗ إِنَّ اللَّهَ كَانَ عَفُوًّا غَفُورًا ﴿٤٣﴾

४४. हे विश्वासीजन हो ! तिमीहरू मानसिकरूपले बेहवास रहेको अवस्थामा जबसम्म आफूले भनेका कुरा स्पष्टरूपमा आफैं बुझ्दैनौ -तबसम्म) नमाजको निकट नजाऊ, न त अशुद्ध* रहेका अवस्थामा यात्रावस्थाबाहेक स्नान नगरी (नमाजको निकट नजाऊ), तथा यदि तिमीहरू बिमार रहेमा अथवा यात्राको अवस्थामा (अशुद्ध रहेमा) अथवा (यदि) तिमीहरूमध्ये कोही शौचालयबाट आएको या महिलाहरूलाई छोएको भएमा र तिमीहरूलाई पानी प्राप्त नभएमा पवित्र माटाको धुलो लिएर त्यसलाई आफ्ना मुखमा र हातमा दल । निश्चय नै, अल्लाह परम परिमार्जक तथा परम क्षमाशील छन् ।

أَلَمْ تَرَ إِلَى الَّذِينَ أُوتُوا نَصِيبًا مِّنَ
الْكِتَابِ يَشْتَرُونَ الضَّلَالَةَ وَيُرِيدُونَ
أَن تَضِلُّوا السَّبِيلَ ﴿٤٤﴾

४५. के तिमीलाई ती व्यक्तिहरूबारे ज्ञात छैन जसलाई पुस्तकको एकांश प्रदान गरिएको थियो? तिनीहरू विपथगामी भई तिमीहरू पनि सुपथबाट विचलित भए हुन्थ्यो भन्ने चाहना राख्छन् ।

وَاللَّهُ أَعْلَمُ بِأَعْدَائِكُمْ ۚ وَكَفَىٰ
بِاللَّهِ وَلِيًّا وَكَفَىٰ بِاللَّهِ نَصِيرًا ﴿٤٥﴾

४६. तथा अल्लाहले तिमीहरूका शत्रुहरूलाई राम्ररी जान्दछन् । तथा मित्रको रूपमा अल्लाह नै पर्याप्त छन्, तथा सहयोगीका रूपमा अल्लाह नै पर्याप्त छन् ।

مِّنَ الَّذِينَ هَادُوا يُحَرِّفُونَ الْكَلِمَ
عَن مَّوَاضِعِهِ وَيَقُولُونَ سَمِعْنَا وَ
عَصَيْنَا وَاسْمَعْ غَيْرَ مُسْمَعٍ وَرَاعِنَا لَيًّا
بِأَلْسِنَتِهِمْ وَطَعْنًا فِي الدِّينِ ۚ وَلَوْ
أَنَّهُمْ قَالُوا سَمِعْنَا وَأَطَعْنَا وَ
اسْمَعْ وَانظُرْنَا لَكَانَ خَيْرًا لَّهُمْ وَ

४७. यहुदीहरूमध्ये केही यस्ता व्यक्तिहरू पनि छन् जसले शब्दहरूलाई तिनका (वास्तविक) स्थानबाट फेरबदल गर्छन् । तथा तिनीहरू भन्छन्, "हामीले सुन्यौं तथा हामीले अवज्ञा गर्‍यौं", तथा "(तिमी) सुन र (तिमीलाई) नसुनियोस्" तथा (आफ्ना मनका कुरालाई) जिब्रो घुमाउँदै तथा आस्थालाई आघात पुर्‍याउने

---

* 'अशुद्ध' शब्द सन्देहात्मक रहेको छ । अरबी शब्द जुनुबन् ( جُنُبًا ) कुनै सहवास गरिसकेको अथवा सहवासबिना नै धातु खारेज गरेको व्यक्तिप्रति प्रयोग हुन्छ । यस्ता अवस्थाहरूमा नमाज अनुसष्ठान गर्नुअघि अनिवार्यरूपमा स्नान गर्नुपर्ने हुन्छ ।

أَقْوَمَ ۙ وَلَـٰكِن لَّعَنَهُمُ ٱللَّهُ بِكُفْرِهِمْ فَلَا يُؤْمِنُونَ إِلَّا قَلِيلًا ﴿٤٦﴾

(विचारले) "रा'इना" (भन्छन्) । तथा यदि तिनीहरूले "हामीले सुन्यौं र हामी आज्ञाकारी भयौं" तथा "(तिमी) सुन", तथा "उन्जुर्ना" भनेका भए तिनीहरूका निम्ति त्यो उत्तम र अधिक उचित हुने थियो । परन्तु तिनीहरूको अविश्वासकै कारण अल्लाहले तिनीहरूलाई शापित गरेका छन्, अतः तिनीहरू विरलै विश्वास गर्छन्* ।

يَـٰٓأَيُّهَا ٱلَّذِينَ أُوتُوا۟ ٱلْكِتَـٰبَ ءَامِنُوا۟ بِمَا نَزَّلْنَا مُصَدِّقًا لِّمَا مَعَكُم مِّن قَبْلِ أَن نَّطْمِسَ وُجُوهًا فَنَرُدَّهَا عَلَىٰٓ أَدْبَارِهَآ أَوْ نَلْعَنَهُمْ كَمَا لَعَنَّآ أَصْحَـٰبَ ٱلسَّبْتِ ۚ وَكَانَ أَمْرُ ٱللَّهِ مَفْعُولًا ﴿٤٧﴾

४८. हे पुस्तकप्राप्त मानिसहरू हो ! हामीले (तिमीहरूका) केही ठूलाठाला मानिसहरूलाई अपमानित गर्नु र तिनीहरूलाई आफ्ना पिठ्यूँ मुख उल्टै पाउ फर्काउनु अथवा जसरी हामीले सबथका मानिसहरूलाई श्रापित गरेका थियौं, त्यसरी नै तिनीहरूलाई शापित गर्नुअघि नै जुन वस्तु हामीले अवतीर्ण गरेका छौं र जसले तिमीहरूसँग रहेको वस्तुलाई पूर्णता प्रदान गर्छ, त्यसमाथि विश्वास स्थापना गर । तथा अल्लाहको आदेश (अनिवार्य रूपमा) पूर्ण भएरै छाड्छ ।

---

* केवल अनुवादले मात्रै उक्त आयतको त्यस भागको प्रकृत भावार्थको न्याय हुन सक्दैन किनभने त्यहाँ ती ढोंगी व्यक्तिहरूको उल्लेख छ जसले पवित्र नबीको अपमान गर्ने अभिप्रायले केही बहुप्रयोगीय वाक्यांशहरूलाई जानीबुझीकन तोडमोड गर्न अशुद्ध उच्चारण गर्थे । विश्वासीजनले जुन वाक्यांशको प्रयोग 'सामे' ना वा अता' ना' ( سَمِعْنَا وَأَطَعْنَا ) गर्थे । जसको अर्थ 'हामीले सुन्यौं तथा हामीले आज्ञापालन गर्‍यौं' हो । ढोंगीहरू भने अता 'ना' ( أَطَعْنَا ) भन्नुपर्ने स्थानमा 'असाइ' ना' ( عَصَيْنَا ) भन्थे ।

यो शब्द आयतको मूल (अरबी) रचनामा प्रयोग भएको छ) त्यसको अर्थ हो 'हामीले सुन्यौं तथा हामीले अवज्ञा गर्‍यौं' । त्यतिमात्र होइन तिनीहरूले असाइ'ना ( عَصَيْنَا ) को स्थानमा अत'ा ना' नै भनेका थिए भन्ने भ्रममा विश्वासी स्रोताहरूलाई पार्ने कुअभिप्रायले तिनीहरू त्यसको उच्चारण गर्थे । तीक्ष्ण स्रोताले भने त्यस उपद्रवको अभिप्राय र अपमानसूचक इङ्गितलाई उपेक्षा गर्न सक्दैनथ्यो । पुनः तिनीहरू 'राइ'ना' ( رَاعِنَا ) शब्दलाई 'राइ'ना' ( رَاعِنَا ) र 'राई'ना' ( رَاعِيْنَا ) को बीचको आधी शब्द उत्पन्न गर्नका निम्ति आफ्नो जिब्रो मोडेर त्यसको उच्चारण गर्थे । 'राइ'ना'को ( رَاعِنَا ) अर्थ 'हामीमाथि नर्मी गर' तथा 'राईना' ( رَاعِيْنَا ) को अर्थ भने 'हे हाम्रा भेडाहरूका संरक्षक' हो । यो पनि उच्चारणको आड लिएर पुनः पवित्र नबीलाई अपमानित गर्ने एउटा प्रयास नै थियो ।

४९. निश्चय नै, अल्लाहले उनको भागीदार तुल्याउने (कार्य) लाई कदापि क्षमा गर्ने छैनन् परन्तु त्यसवाहेक उनले जसलाई इच्छा गर्नेछन् क्षमा प्रदान गर्नेछन् । तथा जसले अल्लाहलाई सहभागीहरूसित सम्बद्ध बनायो त्यसले अवश्य नै एउटा ठूलो पापको संरचना गऱ्यो ।

إِنَّ ٱللَّهَ لَا يَغْفِرُ أَن يُشْرَكَ بِهِۦ وَيَغْفِرُ مَا دُونَ ذَٰلِكَ لِمَن يَشَآءُ ۚ وَمَن يُشْرِكْ بِٱللَّهِ فَقَدِ ٱفْتَرَىٰٓ إِثْمًا عَظِيمًا ﴿٤٨﴾

५०. जसले स्वयम्लाई पवित्र ठहराउँछन् के तिमीलाई तिनीहरूबारे ज्ञात छैन र? होइन, (वस्तुतः) अल्लाहले नै जसलाई चाहन्छन् त्यसलाई पवित्र तुल्याउँछन्, तथा तिनीहरूप्रति सिन्को बराबर पनि अन्याय गरिनेछैन ।

أَلَمْ تَرَ إِلَى ٱلَّذِينَ يُزَكُّونَ أَنفُسَهُم ۚ بَلِ ٱللَّهُ يُزَكِّى مَن يَشَآءُ وَلَا يُظْلَمُونَ فَتِيلًا ﴿٤٩﴾

५१. हेर ! तिनीहरू कसरी अल्लाहकाविरुद्ध मिथ्या साधन गर्छन् । तथा स्पष्ट पापस्वरूप यही नै (कुरो) पर्याप्त छ ।

ٱنظُرْ كَيْفَ يَفْتَرُونَ عَلَى ٱللَّهِ ٱلْكَذِبَ ۖ وَكَفَىٰ بِهِۦٓ إِثْمًا مُّبِينًا ﴿٥٠﴾

५२. के तिमीलाई तिनीहरूबारे ज्ञात छैन जसलाई पुस्तकको एकांश प्रदान गरिएको थियो? तिनीहरू नराम्रा वस्तुहरूप्रति विश्वास गर्छन् तथा सिमोल्लङ्घन गर्ने व्यक्तिहरूको (अनुसरण गर्छन्), तथा अविश्वासीहरूका सम्बन्धमा तिनीहरू के भन्छन् भने, "यिनीहरू विश्वासीहरूभन्दा धर्म क्षेत्रमा अधिक सन्मार्गी छन् ।

أَلَمْ تَرَ إِلَى ٱلَّذِينَ أُوتُوا۟ نَصِيبًا مِّنَ ٱلْكِتَٰبِ يُؤْمِنُونَ بِٱلْجِبْتِ وَٱلطَّٰغُوتِ وَيَقُولُونَ لِلَّذِينَ كَفَرُوا۟ هَٰٓؤُلَآءِ أَهْدَىٰ مِنَ ٱلَّذِينَ ءَامَنُوا۟ سَبِيلًا ﴿٥١﴾

५३. तिनीहरूनै हुन् जसलाई अल्लाहले श्रापित गरेका छन्, तथा जसलाई अल्लाहले श्राप दिन्छन् त्यसका निम्ति तिमीले कदापि (कोही) सहयोगी पाउने छैनौ ।

أُو۟لَٰٓئِكَ ٱلَّذِينَ لَعَنَهُمُ ٱللَّهُ ۖ وَمَن يَلْعَنِ ٱللَّهُ فَلَن تَجِدَ لَهُۥ نَصِيرًا ﴿٥٢﴾

५४. के शासन क्षेत्रमा तिनीहरूको केही अंश रहेको छ? त्यसो भए त तिनीहरूले मानिसहरूलाई खजूरको कोयाको पीठमा रहेको प्वाल (बराबर पनि) दिने छैनन् ।

أَمْ لَهُمْ نَصِيبٌ مِّنَ ٱلْمُلْكِ فَإِذًا لَّا يُؤْتُونَ ٱلنَّاسَ نَقِيرًا ﴿٥٣﴾

५५. अथवा के तिनीहरू त्यसप्रति मानिसहरूको ईर्ष्या गर्छन् अल्लाहले आफ्ना अनुग्रहबाट तिनीहरूलाई जुन प्रदान गरेका छन्?(यदि त्यसो हो भने), निश्चय नै, हामीले इब्राहिमका सन्तानलाई (पनि) पुस्तक तथा तत्त्वज्ञान प्रदान गरेका थियौं । तथा हामीले उनीहरूलाई एउटा विराट राज्य (पनि) प्रदान गरेका थियौं ।

أَمْ يَحْسُدُونَ النَّاسَ عَلَىٰ مَا آتَاهُمُ اللَّهُ مِن فَضْلِهِ ۖ فَقَدْ آتَيْنَا آلَ إِبْرَاهِيمَ الْكِتَابَ وَالْحِكْمَةَ وَآتَيْنَاهُم مُّلْكًا عَظِيمًا ﴿٥٥﴾

५६. तथा तिनीहरूमध्ये केही व्यक्तिहरूले उनीप्रति विश्वास गरे; तथा अन्य केही भने उनीबाट विमुख भए । तथा प्रज्वलित अग्निका रूपको नर्क नै पर्याप्त रहेको छ ।

فَمِنْهُم مَّنْ آمَنَ بِهِ وَمِنْهُم مَّن صَدَّ عَنْهُ ۚ وَكَفَىٰ بِجَهَنَّمَ سَعِيرًا ﴿٥٦﴾

५७. ती व्यक्तिहरू जसले हाम्रा चिह्नहरूप्रति अविश्वास गर्छन्, तिनीहरूलाई चाँडै नै हामी अग्निमा प्रवेश गराउनेछौं । जबजब तिनीहरूका छाला डढ्नेछन्, हामी तिनीहरूलाई त्यसका सट्टामा अन्य छाला प्रदान गर्नेछौं ताकि तिनीहरूले देण्ड चाख्न सकून् । निश्चय नै, अल्लाह सर्वशक्तिमान, तत्त्वज्ञ छन् ।

إِنَّ الَّذِينَ كَفَرُوا بِآيَاتِنَا سَوْفَ نُصْلِيهِمْ نَارًا ۖ كُلَّمَا نَضِجَتْ جُلُودُهُم بَدَّلْنَاهُمْ جُلُودًا غَيْرَهَا لِيَذُوقُوا الْعَذَابَ ۗ إِنَّ اللَّهَ كَانَ عَزِيزًا حَكِيمًا ﴿٥٧﴾

५८. तथा तिनीहरू जसले विश्वास गर्छन् तथा पुण्यकार्य गर्छन्, तिनीहरूलाई हामी यस्ता बगैंचामा प्रवेश गराउनेछौं जसमनि नहरहरू बगिरहेछन्, त्यहाँ तिनीहरू सदा रहनेछन्, तिनीहरूका निमित्त त्यहाँ (हामीले) पवित्र तुल्याएका जोडी हुनेछन्, तथा हामी तिनीहरूलाई एउटा आनन्द र प्रगाढ छाँया(मय स्थान)मा प्रवेश गराउनेछौं ।

وَالَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ سَنُدْخِلُهُمْ جَنَّاتٍ تَجْرِي مِن تَحْتِهَا الْأَنْهَارُ خَالِدِينَ فِيهَا أَبَدًا ۖ لَّهُمْ فِيهَا أَزْوَاجٌ مُّطَهَّرَةٌ ۖ وَنُدْخِلُهُمْ ظِلًّا ظَلِيلًا ﴿٥٨﴾

५९. निस्सन्देह, अल्लाह तिमीहरूलाई धरोहरू (अमानतहरू) तिनका योग्य व्यक्तिहरूलाई सुम्पने र मानिसहरूबीच फैसला गर्दा न्यायका साथ फैसला गर्ने आदेश दिन्छन् । अल्लाहले जुन कुराको

إِنَّ اللَّهَ يَأْمُرُكُمْ أَن تُؤَدُّوا الْأَمَانَاتِ إِلَىٰ أَهْلِهَا وَإِذَا حَكَمْتُم بَيْنَ النَّاسِ أَن تَحْكُمُوا بِالْعَدْلِ ۚ إِنَّ اللَّهَ نِعِمَّا يَعِظُكُم بِهِ ۗ إِنَّ اللَّهَ كَانَ سَمِيعًا بَصِيرًا ﴿٥٩﴾

तिमीहरूलाई उपदेश दिन्छन् त्यो अवश्य अति उत्तम रहेको छ । अल्लाह परमस्रोता, सर्वद्रष्टा छन् ।

يَاأَيُّهَا الَّذِينَ آمَنُوا أَطِيعُوا اللَّهَ وَأَطِيعُوا الرَّسُولَ وَأُولِي الْأَمْرِ مِنْكُمْ ۖ فَإِنْ تَنَازَعْتُمْ فِي شَيْءٍ فَرُدُّوهُ إِلَى اللَّهِ وَالرَّسُولِ إِنْ كُنْتُمْ تُؤْمِنُونَ بِاللَّهِ وَالْيَوْمِ الْآخِرِ ۚ ذَٰلِكَ خَيْرٌ وَأَحْسَنُ تَأْوِيلًا ﴿٥٩﴾

६०. हे विश्वासीजन हो ! अल्लाहका आज्ञाकारी बन, तथा (उनका) सन्देशवाहकका तथा ती तिमीहरूमाथिका अधिकारीहरू*का (पनि) आज्ञाकारी बन, तथा यदि तिमीहरू अल्लाह र अन्तिम दिनप्रति विश्वास गर्छौ भने, जुन कुरामा तिमीहरूबीच विवाद उत्पन्न हुन्छ त्यसलाई अल्लाह तथा (उनका) सन्देशवाहकतर्फ मोड । अन्तमा यही कुरा नै सर्वोत्तम र प्रशंसायोग्य रहेको छ ।

أَلَمْ تَرَ إِلَى الَّذِينَ يَزْعُمُونَ أَنَّهُمْ آمَنُوا بِمَا أُنْزِلَ إِلَيْكَ وَمَا أُنْزِلَ مِنْ قَبْلِكَ يُرِيدُونَ أَنْ يَتَحَاكَمُوا إِلَى الطَّاغُوتِ وَقَدْ أُمِرُوا أَنْ يَكْفُرُوا بِهِ ۖ وَيُرِيدُ الشَّيْطَانُ أَنْ يُضِلَّهُمْ ضَلَالًا بَعِيدًا ﴿٦٠﴾

६१. के तिमीलाई तिनीहरूबारे ज्ञात छैन जसले तिमीतर्फ तथा तिमीभन्दा पहिला अवतीर्ण गरिएका कुराप्रति विश्वासस्थापनाको ढोंग गर्छन्? तिनीहरू विद्रोहीहरूबाट नै फैसला प्राप्त गर्न चाहन्छन्, यद्यपि तिनीहरूलाई उनीहरूको अनुसरण नगर्न आदेश दिइएको थियो । तथा सैतान तिनीहरूलाई पूर्णरूपले विपथगामी बनाउन चाहन्छ ।

وَإِذَا قِيلَ لَهُمْ تَعَالَوْا إِلَىٰ مَا أَنْزَلَ اللَّهُ وَإِلَى الرَّسُولِ رَأَيْتَ الْمُنَافِقِينَ يَصُدُّونَ عَنْكَ صُدُودًا ﴿٦١﴾

६२. तथा जब तिनीहरूलाई भनिन्छ, "जुन कुरा अल्लाहले अवतीर्ण गरेको छन् त्यस तर्फ तथा (उनका) सन्देशवाहकतर्फ

---

* 'ऊलिल् अम्रे मिन्कुम्' ( أُولِي الْأَمْرِ مِنْكُمْ ) वाक्यांशको (अर्थ) अरबी अर्थानुसार (तिमीहरूमाथिका अधिकारीहरू) केही व्यक्तिहरूले ठीकसित बुझ्न सकेका छैनन् ।'मिनकुम्' ( مِنْكُمْ ) शब्द विशेषगरी चासोको वस्तु रहेको छ जुन वास्तवमा 'मिन्' مِنْ र 'कुम्' ( كُمْ ) दुईवटा अव्ययहरू मिलेर बनेको छ । 'मिन्' ( مِنْ ) को अर्थ 'बाट' तथा 'कुम्' ( كُمْ ) को अर्थ 'तिमीहरू' हो । यस वाक्यांशको शब्दशः अनुवाद गर्दै केही अनुवादकहरूले यसको अर्थ 'तिमीहरूमध्येबाट' हो भन्ने सम्झेका छन् । भन्नुको तात्पर्य तिमीहरू केवल ती अधिकारीहरूको आज्ञापालन गर जो तिमीहरूमध्येबाट भएका छन् अर्थात् केवल मुस्लिम अधिकारी वर्ग । यस विशेष उदाहरणमा भने 'मिन्' ( مِنْ ) अव्ययले मात्र 'कुम्' ( كُمْ ) लाई 'ऊलिल् अम्रे' ( أُولِي الْأَمْرِ ) शब्दसित स्वामित्ववाचक सम्बन्धमा जोड्ने भूमिका निभाएको छ । तथा यसको अनुवाद 'ती तिमीहरूमाथिका अधिकारीहरू' बन्नेछ ।

आऊ," तब तिमी ती ढोँगीहरूलाई विरक्तताका साथ तिमीबाट विमुख भएको देख्छौ ।

६३. तथा यस्तो कसरी हुन्छ, जब तिनीहरूमाथि तिनीहरूका हातले तिनीहरू भन्दा अघि जुन कुरा पठाएका छन् त्यसका कारण कुनै विपद आइलाग्छ (तब) तिनीहरू तिम्रा सामु आएर अल्लाहको शपथ खाँदै भन्छन्, "परोपकार र मेलमिलाप (वर्धक) कार्य गर्नुबाहेक हाम्रो अन्य केही उद्देश्य थिएन?"

فَكَيْفَ إِذَآ أَصَابَتْهُم مُّصِيبَةٌ بِمَا قَدَّمَتْ أَيْدِيهِمْ ثُمَّ جَآءُوكَ يَحْلِفُونَ بِاللّٰهِ إِنْ أَرَدْنَآ إِلَّآ إِحْسَانًا وَتَوْفِيقًا ٦٢

६४. यिनीहरू तिनै हुन् जसका हृदयका भेदहरूलाई अल्लाहले राम्ररी जान्दछन् । त्यसकारण तिनीहरूबाट अलग्ग रहेर तिनीहरूलाई उपदेश दिने गर तथा तिनीहरूसँग तिनीहरूका बारेमा नै प्रभावकारी कुरा गर्ने गर ।

أُولَٰٓئِكَ الَّذِينَ يَعْلَمُ اللّٰهُ مَا فِي قُلُوبِهِمْ فَأَعْرِضْ عَنْهُمْ وَعِظْهُمْ وَقُل لَّهُمْ فِيٓ أَنفُسِهِمْ قَوْلًا بَلِيغًا ٦٣

६५. तथा हामीले कुनै सन्देशवाहकलाई पठाएनौं परन्तु अल्लाहको आदेशानुसार तिनको अनुसरण गरियोस् भनी तथा यदि तिनीहरू तिमीसमक्ष आएका भए तिनीहरूले जब आफ्नो आत्माप्रति अन्याय गरेका थिए र अल्लाहसँग क्षमायाचना गरेका भए तथा यदि सन्देशवाहकले पनि) तिनीहरूका निम्ति क्षमायाचना गरेका भए, तिनीहरूले अवश्य अल्लाहलाई बारम्बार (कृपा) दृष्टिकर्ता, (तथा) परम दानशीलका रूपमा पाउने थिए ।

وَمَآ أَرْسَلْنَا مِن رَّسُولٍ إِلَّا لِيُطَاعَ بِإِذْنِ اللّٰهِ ۚ وَلَوْ أَنَّهُمْ إِذ ظَّلَمُوٓا أَنفُسَهُمْ جَآءُوكَ فَاسْتَغْفَرُوا اللّٰهَ وَاسْتَغْفَرَ لَهُمُ الرَّسُولُ لَوَجَدُوا اللّٰهَ تَوَّابًا رَّحِيمًا ٦٤

६६. परन्तु होइन, तिम्रा प्रतिपालकको कसम, जबसम्म तिनीहरूले आफ्ना सम्पूर्ण विवादहरूका निम्ति तिमीलाई निर्णायक बनाउँदैनन् तथा तिमीले गरेको निर्णयप्रति आफ्ना हृदयमा कुनै प्रकारको द्विविधारहित स्थिति पाउँदैनन् तथा उनीहरू जबसम्म पूर्णरूपले आज्ञाकारी बन्दैनन् तबसम्म

فَلَا وَرَبِّكَ لَا يُؤْمِنُونَ حَتَّىٰ يُحَكِّمُوكَ فِيمَا شَجَرَ بَيْنَهُمْ ثُمَّ لَا يَجِدُوا فِيٓ أَنفُسِهِمْ حَرَجًا مِّمَّا قَضَيْتَ وَيُسَلِّمُوا تَسْلِيمًا ٦٥

तिनीहरू विश्वासी बन्दैनन् ।

وَلَوْ اَنَّا كَتَبْنَا عَلَيْهِمْ اَنِ اقْتُلُوْٓا اَنْفُسَكُمْ اَوِ اخْرُجُوْا مِنْ دِيَارِكُمْ مَّا فَعَلُوْهُ اِلَّا قَلِيْلٌ مِّنْهُمْ ؕ وَلَوْ اَنَّهُمْ فَعَلُوْا مَا يُوْعَظُوْنَ بِهٖ لَكَانَ خَيْرًا لَّهُمْ وَ اَشَدَّ تَثْبِيْتًا ﴿٦٦﴾

६७. तथा यदि हामीले तिनीहरूलाई आफैँले आफूलाई बध गर* अथवा आफ्ना घरहरूलाई त्याग" भनी आदेश दिएको भए, तिनीहरूमध्ये केही व्यक्तिहरूलेबाहेक (अरू) कसैले त्यसो गर्ने थिएनन्, तथा यदि तिनीहरूले आफूलाई दिइएको आदेशानुसार कार्य गरेको भए, अवश्य त्यो तिनीहरूका निम्ति भलो तथा अधिक मात्रामा सुदृढसाधक हुने थियो ।

وَّاِذًا لَّاٰتَيْنٰهُمْ مِّنْ لَّدُنَّآ اَجْرًا عَظِيْمًا ﴿٦٧﴾

६८. तथा हामी त्यस अवस्थामा तिनीहरूलाई अवश्य आफ्नो तर्फबाट महान प्रतिदान प्रदान गर्ने थियौं ।

وَّلَهَدَيْنٰهُمْ صِرَاطًا مُّسْتَقِيْمًا ﴿٦٨﴾

६९. तथा अवश्य तिनीहरूलाई हामी सन्मार्ग प्रदर्शन गर्ने थियौं ।

وَمَنْ يُّطِعِ اللّٰهَ وَالرَّسُوْلَ فَاُولٰٓئِكَ مَعَ الَّذِيْنَ اَنْعَمَ اللّٰهُ عَلَيْهِمْ مِّنَ النَّبِيّٖنَ وَالصِّدِّيْقِيْنَ وَالشُّهَدَآءِ وَالصّٰلِحِيْنَ ۚ وَحَسُنَ اُولٰٓئِكَ رَفِيْقًا ﴿٦٩﴾

७०. तथा त्यो जसले अल्लाह र (उनका) यी सन्देशवाहकको आज्ञापालन गर्छन् तिनीहरू ती व्यक्तिहरूमा सामेल हुनेछन् जसलाई अल्लाहले पुरस्कृत गरेका छन्, जस्तै, नबीहरू, सत्यवादीहरू, शहिदहरू तथा धर्मपरायणहरू । तथा यिनीहरू अति उत्कृष्ट मित्रहरू हुन् ।

ذٰلِكَ الْفَضْلُ مِنَ اللّٰهِ ؕ وَكَفٰى بِاللّٰهِ عَلِيْمًا ﴿٧٠﴾

७१. यो अल्लाहको अनुकम्पा हो, तथा ती सर्वज्ञ अल्लाह नै पर्याप्त रहेका छन् ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا خُذُوْا حِذْرَكُمْ فَانْفِرُوْا ثُبَاتٍ اَوِ انْفِرُوْا جَمِيْعًا ﴿٧١﴾

७२. हे विश्वासीजन हो ! आफ्नो सुरक्षाको प्रबन्ध गर; त्यसपश्चात् चाहे विभिन्न (साना-साना) समूहका रूपमा होस् अथवा सबै एकत्रितरूपमा होस्, प्रस्थान गर

---

* यस कुराले तिनीहरूलाई आत्महत्या गर्ने आदेश दिइएको थियो भन्ने कदापि बुझाउँदैन अपितु यसको तात्पर्य केवल तिनीहरूलाई आफ्नो अहम्को बध गर्ने र आफूलाई पूर्णरूपले अल्लाहको इच्छाप्रति समर्पण गर्ने उपदेश दिनु रहेको छ ।

७३. तथा तिमीहरूमध्ये निश्चय नै त्यस्तो व्यक्ति (पनि) रहेको छ जसले विलम्ब गर्ने गर्छ तथा यदि तिमीहरूमाथि कुनै विपत्ति आइलागेमा त्यसले भन्छ, "निश्चय नै अल्लाहको ममाथि कृपा रहेको हुनाले म तिनीहरूसँग रहेको थिइँन ।"

وَإِنَّ مِنكُمْ لَمَن لَّيُبَطِّئَنَّ فَإِنْ أَصَابَتْكُم مُّصِيبَةٌ قَالَ قَدْ أَنْعَمَ اللَّهُ عَلَيَّ إِذْ لَمْ أَكُن مَّعَهُمْ شَهِيدًا ﴿٧٢﴾

७४. परन्तु यदि तिमीहरूलाई अल्लाहको केही अनुग्रह प्राप्त भएमा चाहिँ तिमीहरू तथा उसका बीचमा प्रेमको सम्बन्ध नरहेझैँ उ के भन्छ भने, "तिनीहरूसँग म पनि रहेको भए, त मैले पनि ठूलो सफलता प्राप्त गर्ने थिएँ!"

وَلَئِنْ أَصَابَكُمْ فَضْلٌ مِّنَ اللَّهِ لَيَقُولَنَّ كَأَن لَّمْ تَكُن بَيْنَكُمْ وَبَيْنَهُ مَوَدَّةٌ يَا لَيْتَنِي كُنتُ مَعَهُمْ فَأَفُوزَ فَوْزًا عَظِيمًا ﴿٧٣﴾

७५. त्यसकारण, ती व्यक्तिहरू जसले यस वर्तमान जीवनलाई परलोक प्राप्तिका निम्ति बेच्छन् तिनीहरूले अल्लाहका मार्गमा संघर्ष गरून् । तथा जसले अल्लाहका मार्गमा संघर्ष गर्छ, चाहे त्यो हताहत होस् अथवा विजयी होस्, हामी त्यसलाई चाँडै नै महान प्रतिदान प्रदान गर्नेछौं ।

فَلْيُقَاتِلْ فِي سَبِيلِ اللَّهِ الَّذِينَ يَشْرُونَ الْحَيَاةَ الدُّنْيَا بِالْآخِرَةِ ۚ وَمَن يُقَاتِلْ فِي سَبِيلِ اللَّهِ فَيُقْتَلْ أَوْ يَغْلِبْ فَسَوْفَ نُؤْتِيهِ أَجْرًا عَظِيمًا ﴿٧٤﴾

७६. तथा तिमीहरूलाई के भयो र तिमीहरू अल्लाहका मार्गमा तथा ती दुर्बल पुरुषहरू, महिलाहरू, तथा बाल-बालिकाहरूका निम्ति संघर्ष गर्दैनौ, जसले भन्छन् "हे हाम्रा प्रतिपालक, हामीलाई यस नगरबाट निकाल जसका बासिन्दाहरू अत्याचारी छन्, तथा हाम्रा निम्ति आफ्ना जुनाफबाट कुनै मित्र खडा गर, तथा आफ्ना जुनाफबाट हाम्रा निम्ति कुनै मद्दतगार खडा गर?"

وَمَا لَكُمْ لَا تُقَاتِلُونَ فِي سَبِيلِ اللَّهِ وَالْمُسْتَضْعَفِينَ مِنَ الرِّجَالِ وَالنِّسَاءِ وَالْوِلْدَانِ الَّذِينَ يَقُولُونَ رَبَّنَا أَخْرِجْنَا مِنْ هَٰذِهِ الْقَرْيَةِ الظَّالِمِ أَهْلُهَا وَاجْعَل لَّنَا مِن لَّدُنكَ وَلِيًّا وَاجْعَل لَّنَا مِن لَّدُنكَ نَصِيرًا ﴿٧٥﴾

७७. जो विश्वासी छन् ती व्यक्तिहरू अल्लाहका मार्गमा संघर्ष गर्छन्, तथा जसले अविश्वास गर्छन् तिनीहरू सैतानका मार्गमा संघर्ष गर्छन् । त्यसकारण तिमीहरू सैतानका मित्रहरूविरुद्ध संघर्ष गर; निश्चय

الَّذِينَ آمَنُوا يُقَاتِلُونَ فِي سَبِيلِ اللَّهِ ۖ وَالَّذِينَ كَفَرُوا يُقَاتِلُونَ فِي سَبِيلِ الطَّاغُوتِ فَقَاتِلُوا أَوْلِيَاءَ الشَّيْطَانِ ۖ إِنَّ كَيْدَ الشَّيْطَانِ كَانَ ضَعِيفًا ﴿٧٦﴾

ع

नै, सैतानको दाउपेच दुर्बल हुन्छ ।

७८. के तिमीलाई तिनीहरूबारे ज्ञात छैन जसलाई भनिएको थियो; "आफ्ना हातलाई रोक तथा नमाजको अनुष्ठान गर तथा जगात चुक्ता गर्ने गर?" अतः जब तिनीहरूका निम्ति युद्ध निर्धारण गरियो, हेर ! तिनीहरूमध्ये केही व्यक्तिहरू (ता) जति तिनीहरूले अल्लाहसँग डराउनु आवश्यक थियो (त्यति) अथवा त्यो भन्दा पनि बढी मानिसहरूसँग डराऊन थाले; तथा भन्न लागे, "हे हाम्रा प्रतिपालक ! तिमीले हामीहरूका निम्ति किन युद्ध निर्धारण गर्‍यौ? केही समयका निम्ति भए पनि तिमीले हामीलाई अवकाश किन दिएनौ?" तिमी भन, "यस संसारको लाभ क्षणिक रहेको छ तथा जसले (अल्लाहको) डर मनमा राख्छ त्यसका निम्ति परलोक उत्तम रहनेछ; तथा तिमीहरूमाथि सिन्को (कण) बराबर पनि अन्याय गरिनेछैन ।"

أَلَمْ تَرَ إِلَى الَّذِينَ قِيلَ لَهُمْ كُفُّوا
أَيْدِيَكُمْ وَأَقِيمُوا الصَّلٰوةَ وَآتُوا
الزَّكٰوةَ ۚ فَلَمَّا كُتِبَ عَلَيْهِمُ الْقِتَالُ
إِذَا فَرِيقٌ مِّنْهُمْ يَخْشَوْنَ النَّاسَ
كَخَشْيَةِ اللّٰهِ أَوْ أَشَدَّ خَشْيَةً ۚ وَقَالُوا
رَبَّنَا لِمَ كَتَبْتَ عَلَيْنَا الْقِتَالَ ۚ لَوْلَا
أَخَّرْتَنَا إِلَىٰ أَجَلٍ قَرِيبٍ ۗ قُلْ مَتَاعُ
الدُّنْيَا قَلِيلٌ ۚ وَالْآخِرَةُ خَيْرٌ لِّمَنِ
اتَّقَىٰ وَلَا تُظْلَمُونَ فَتِيلًا ﴿٧٨﴾

७९. तिमीहरू जहाँ कहीँ रहे पनि मृत्युले तिमीहरूलाई गाँज्नेछ, चाहे तिमीहरू सुदृढ दुर्गहरूमा नै किन नबस । तथा यदि तिनीहरूलाई केही लाभ भयो भने तिनीहरू भन्छन्, "यो अल्लाहको कृपाद्वारा भएको हो, तथा यदि तिनीहरूमाथि सङ्कट आइलागेमा तिनीहरू भन्छन्, "यो तिम्रातर्फबाट आइलागेको हो ।" तिमी भन, "सबै कुरा अल्लाहका तर्फबाट नै भएको हो ।" यी मानिसहरूलाई के भएको छ जसले गर्दा यिनीहरू कुनै कुराको समझदारीको निकट आउँदैनन्?

أَيْنَ مَا تَكُونُوا يُدْرِكْكُمُ الْمَوْتُ وَلَوْ
كُنْتُمْ فِي بُرُوجٍ مُّشَيَّدَةٍ ۗ وَإِنْ
تُصِبْهُمْ حَسَنَةٌ يَّقُولُوا هٰذِهِ مِنْ
عِنْدِ اللّٰهِ ۚ وَإِنْ تُصِبْهُمْ سَيِّئَةٌ يَّقُولُوا
هٰذِهِ مِنْ عِنْدِكَ ۗ قُلْ كُلٌّ مِّنْ عِنْدِ
اللّٰهِ ۗ فَمَالِ هٰؤُلَاءِ الْقَوْمِ لَا يَكَادُونَ
يَفْقَهُونَ حَدِيثًا ﴿٧٩﴾

८०. तिमीलाई जति असल कुरा प्राप्त हुन्छ त्यो अल्लाहका तर्फबाट हुन्छ; तथा तिमीमाथि जुन सङ्कट आइलाग्छ त्यो तिम्रा आफ्नै कारणले आइलाग्छ । तथा तिमीलाई हामीले मानिसहरूका निम्ति सन्देशवाहक

مَا أَصَابَكَ مِنْ حَسَنَةٍ فَمِنَ اللّٰهِ ۚ وَ
مَا أَصَابَكَ مِنْ سَيِّئَةٍ فَمِنْ نَّفْسِكَ ۗ
وَأَرْسَلْنٰكَ لِلنَّاسِ رَسُولًا ۗ وَكَفٰى
بِاللّٰهِ شَهِيدًا ﴿٨٠﴾

स्वरूप पठाएका हौं । तथा साक्षीस्वरूप अल्लाह नै पर्याप्त रहेका छन् ।

مَنْ يُّطِعِ الرَّسُوْلَ فَقَدْ اَطَاعَ اللّٰهَ ۚ وَمَنْ تَوَلّٰى فَمَآ اَرْسَلْنٰكَ عَلَيْهِمْ حَفِيْظًا ﴿٨٠﴾

८१. जसले सन्देशवाहकको आज्ञापालन गर्छ त्यसले अवश्य अल्लाहको आज्ञापालन गर्छ; था जुन व्यक्ति विमुख हुन्छ, तब (भने) हामीले तिमीलाई तिनीहरूका रक्षकस्वरूप पठाएका होइनौं ।

وَيَقُوْلُوْنَ طَاعَةٌ ۡ فَاِذَا بَرَزُوْا مِنْ عِنْدِكَ بَيَّتَ طَآئِفَةٌ مِّنْهُمْ غَيْرَ الَّذِيْ تَقُوْلُ ۚ وَ اللّٰهُ يَكْتُبُ مَا يُبَيِّتُوْنَ ۚ فَاَعْرِضْ عَنْهُمْ وَ تَوَكَّلْ عَلَى اللّٰهِ ۚ وَ كَفٰى بِاللّٰهِ وَكِيْلًا ﴿٨١﴾

८२. अनि तिनीहरू भन्छन्: "*आज्ञाकारीता* (नै हाम्रो मार्गदर्शक सिद्धान्त हो)," परन्तु जब तिनीहरू तिम्रा सामुबाट प्रस्थान गर्छन्, तिनीहरूमध्ये एउटा समूहले तिम्रा कुराहरूका विपरीत योजना बनाउँदै रात बिताउँछ । तिनीहरू रातभरी जुन योजना बनाउँछन् अल्लाहले त्यसको अभिलेख राख्छन् । त्यसकारण तिमी तिनीहरूबाट अलग्ग रहेर अल्लाहप्रति पूर्ण भरोसा गर । तथा कार्य सम्पादकको रूपमा अल्लाह पर्याप्त रहेका छन् ।

اَفَلَا يَتَدَبَّرُوْنَ الْقُرْاٰنَ ۚ وَلَوْ كَانَ مِنْ عِنْدِ غَيْرِ اللّٰهِ لَوَجَدُوْا فِيْهِ اخْتِلَافًا كَثِيْرًا ﴿٨٢﴾

८३. त्यसो भए के तिनीहरूले कुरानका सम्बन्धमा ध्यान दिने छैनन् त? यदि यो अल्लाहबाहेक अन्य कसैका तर्फबाट आएको भए, अवश्य तिनीहरूले त्यसमा धेरै मतभेद* पाउने थिए ।

وَاِذَا جَآءَهُمْ اَمْرٌ مِّنَ الْاَمْنِ اَوِ الْخَوْفِ اَذَاعُوْا بِهٖ ۚ وَلَوْ رَدُّوْهُ اِلَى الرَّسُوْلِ وَاِلٰٓى اُولِي الْاَمْرِ مِنْهُمْ لَعَلِمَهُ الَّذِيْنَ يَسْتَنْۢبِطُوْنَهٗ مِنْهُمْ ۚ وَلَوْلَا فَضْلُ اللّٰهِ

८४. जब तिनीहरू शान्तिको सम्बन्धमा अथवा सङ्कटको सम्बन्धमा कुनै घटनाको (मिथ्या खबरको) कल्पना गर्छन् त्यसलाई तिनीहरूले फैलाएरै छाड्छन्; परन्तु यदि

---

* कौरानिक अभिव्यक्ति 'इख्तिलाफन् कसीरन्' ( اِخْتِلَافًا كَثِيْرًا ), (धेरै मतभेद)ले वस्तुतः प्रतिकूलता बुझाउँछ । यसप्रकार त्यसको अर्थ के बन्छ भने यदि अल्लाहबाहेक अन्य कोही पवित्र कुरानको ग्रन्थकार रहेको भए मानिसहरूले त्यसमा अवश्य धेरै असमानता पाउने थिए । ठीक यस्तै अभिव्यक्ति विश्व-ब्रह्माण्डको सृष्टिका सम्बन्धमा ६७:४ (अल्-मुल्क) मा अल्लाहको कार्यमा कुनै प्रकारको खोट अथवा असमानता पाउन असम्भव छ भन्ने घोषणास्वरूप पाइन्छ ।

عَلَيْكُمْ وَرَحْمَتُهُ لَاتَّبَعْتُمُ الشَّيْطٰنَ إِلَّا قَلِيْلًا ﴿٨٣﴾

तिनीहरूले त्यसलाई सन्देशवाहक तथा आफूहरू- माथिका अधिकारीहरूसमक्ष पुऱ्याउँथे भने तिनीहरूमध्ये घटनाको सूक्ष्मतापूर्वक परीक्षण गर्ने व्यक्तिहरूले सत्य (के हो भन्ने कुरा) अवश्य जान्ने थिए । तथा यदि तिमीहरूप्रति अल्लाहको कृपा र उनको दया नरहेको भए, केही व्यक्तिहरूबाहेक, तिमीहरूले सैतानको अनुसरण गर्ने थियौ ।

فَقَاتِلْ فِيْ سَبِيْلِ اللّٰهِ ۚ لَا تُكَلَّفُ إِلَّا نَفْسَكَ وَحَرِّضِ الْمُؤْمِنِيْنَ ۚ عَسَى اللّٰهُ أَنْ يَّكُفَّ بَأْسَ الَّذِيْنَ كَفَرُوْا ۚ وَاللّٰهُ أَشَدُّ بَأْسًا وَّأَشَدُّ تَنْكِيْلًا ﴿٨٤﴾

८५. अतः तिमी अल्लाहका मार्गमा सङ्घर्ष गर- तिमीलाई आफूबाहेक अन्य कसैको जिम्मेवार ठहऱ्याइएको छैन– तथा तिमी विश्वासीहरूलाई प्रेरणा प्रदान गर । सम्भव छ अल्लाहले अविश्वासीहरूको शक्तिलाई (युद्धलाई) अवरोध गरून्, तथा शक्तिका दृष्टिले अल्लाह परम शक्तिमान छन् तथा दण्ड दिने काममा (पनि उनी) कठोर छन् ।

مَنْ يَّشْفَعْ شَفَاعَةً حَسَنَةً يَّكُنْ لَّهُ نَصِيْبٌ مِّنْهَا ۚ وَمَنْ يَّشْفَعْ شَفَاعَةً سَيِّئَةً يَّكُنْ لَّهُ كِفْلٌ مِّنْهَا ۚ وَكَانَ اللّٰهُ عَلٰى كُلِّ شَيْءٍ مُّقِيْتًا ﴿٨٥﴾

८६. जसले उत्तम सिफारिस गर्छ त्यसले त्यसबाट एउटा अंश प्राप्त गर्नेछ, तथा जसले निकृष्ट सिफारिस गर्छ त्यसले त्यसै मुताबिक (निकृष्ट फलको) अंश प्राप्त गर्नेछ । तथा सम्पूर्ण कुराहरूमाथि अल्लाहको पूर्णक्षमता रहेको छ ।

وَإِذَا حُيِّيْتُمْ بِتَحِيَّةٍ فَحَيُّوْا بِأَحْسَنَ مِنْهَا أَوْ رُدُّوْهَا ۗ إِنَّ اللّٰهَ كَانَ عَلٰى كُلِّ شَيْءٍ حَسِيْبًا ﴿٨٦﴾

८७. तथा जब तिमीहरूसित प्रार्थनाका साथ अभिवादन प्रकट गरिन्छ, तिमीहरू त्योभन्दा अझ राम्रो शब्दले अभिवादन फिराऊ, अथवा (कम्तीमा) त्यही शब्दावली) फर्काऊ* । अल्लाहले अवश्य सम्पूर्ण कुराहरूको हिसाब लिन्छन् ।

---

* यसले केवल मौखिक अभिवादन मात्र नभएर सबै प्रकारका उपहारहरूको अधिक उदारतापूर्वक अथवा कम्तीमा त्यस परिमाणको उत्तर (प्रतिदान) फर्काउनु पर्छ भन्ने कुरो अर्थ्याउँछ ।

८८. अल्लाह तिनै हुन् जसबाहेक अर्को कोही उपासनायोग्य छैन । निःस्सन्देह उनले तिमीहरूलाई त्यस पुनरुत्थानका दिनसम्म एकत्रित गर्दै जानेछन् जसका सम्बन्धमा कुनै सन्देह छैन । तथा आफ्ना वचनमा अल्लाहभन्दा सत्यवादी अर्को को हुन सक्छ र?

اَللّٰهُ لَآ اِلٰهَ اِلَّا هُوَ ۚ لَيَجْمَعَنَّكُمْ اِلٰى يَوْمِ الْقِيٰمَةِ لَا رَيْبَ فِيْهِ ۚ وَمَنْ اَصْدَقُ مِنَ اللّٰهِ حَدِيْثًا ﴿٨٧﴾

८९. तिमीहरूलाई के भएको छ र तिमीहरू ढोँगीहरूका सम्बन्धमा दुईपक्षमा विभाजित भएका छौ? वस्तुतः अल्लाहले तिनीहरूलाई उनीहरूको कमाइका कारण चित्त पारिदिएका छन् । जसलाई अल्लाहले विनाश गरेका छन्, के त्यसलाई तिमीहरू मार्गदर्शन गर्न चाहन्छौ? तथा अल्लाहले जसलाई विनाश गर्छन् त्यसका निम्ति तिमीले कुनै मार्ग प्राप्त गर्न सक्नेछैनौ ।

فَمَا لَكُمْ فِى الْمُنٰفِقِيْنَ فِئَتَيْنِ وَاللّٰهُ اَرْكَسَهُمْ بِمَا كَسَبُوْا ۚ اَتُرِيْدُوْنَ اَنْ تَهْدُوْا مَنْ اَضَلَّ اللّٰهُ ۚ وَمَنْ يُّضْلِلِ اللّٰهُ فَلَنْ تَجِدَ لَهٗ سَبِيْلًا ﴿٨٨﴾

९०. तिनीहरू के चाहन्छन् भने– तिमीहरू पनि तिनीहरू जस्तै अविश्वासी होऊ, ताकि तिमीहरू सबै एकैनासका बन । त्यसकारण जबसम्म तिनीहरू अल्लाहका मार्गमा बसाइँ सर्दैनन् तवसम्म तिनीहरूमध्ये कसैलाई (पनि) मित्र नवनाऊ । यदि तिनीहरू विमुख भए भने, तिनीहरूलाई पक र जहाँ तिनीहरूलाई भेट्छौ त्यहीँ तिनीहरूको हत्या गर; तथा तिनीहरूमध्ये न कसैलाई मित्र वनाऊ न सहयोगी नै;

وَدُّوْا لَوْ تَكْفُرُوْنَ كَمَا كَفَرُوْا فَتَكُوْنُوْنَ سَوَآءً فَلَا تَتَّخِذُوْا مِنْهُمْ اَوْلِيَآءَ حَتّٰى يُهَاجِرُوْا فِىْ سَبِيْلِ اللّٰهِ ۚ فَاِنْ تَوَلَّوْا فَخُذُوْهُمْ وَاقْتُلُوْهُمْ حَيْثُ وَجَدْتُّمُوْهُمْ ۖ وَلَا تَتَّخِذُوْا مِنْهُمْ وَلِيًّا وَّلَا نَصِيْرًا ﴿٨٩﴾

९१. सिवाय ती व्यक्तिहरू जसको सम्वन्ध कुनै यस्तो जातिसँग रहेको होस् जसका जाति र तिमीहरूवीच सम्झौता रहेको छ, अथवा ती व्यक्तिहरू जो मनले तिमीहरूसँग अथवा आफ्ना मानिसहरूसँग लड्न सङ्कोच मानेको अवस्थामा तिमीहरूका सामु आउँछन् । तथा यदि अल्लाहले चाहेका भए उनले अवश्य तिनीहरूलाई तिमीहरूमाथि विजय प्राप्त

اِلَّا الَّذِيْنَ يَصِلُوْنَ اِلٰى قَوْمٍۭ بَيْنَكُمْ وَبَيْنَهُمْ مِّيْثَاقٌ اَوْ جَآءُوْكُمْ حَصِرَتْ صُدُوْرُهُمْ اَنْ يُّقَاتِلُوْكُمْ اَوْ يُقَاتِلُوْا قَوْمَهُمْ ۚ وَلَوْ شَآءَ اللّٰهُ لَسَلَّطَهُمْ عَلَيْكُمْ فَلَقٰتَلُوْكُمْ ۚ فَاِنِ اعْتَزَلُوْكُمْ فَلَمْ يُقَاتِلُوْكُمْ وَاَلْقَوْا اِلَيْكُمُ السَّلَمَ ۙ فَمَا جَعَلَ اللّٰهُ لَكُمْ عَلَيْهِمْ سَبِيْلًا ﴿٩٠﴾

गर्ने शक्ति दिने थिए तब त तिनीहरू अवश्य नै तिमीहरूसँग लड्ने थिए । अतः यदि तिनीहरू तिमीहरूबाट टाढा रहेमा तथा तिमीहरूसँग युद्ध नगरेमा तथा तिमीहरूतर्फ सन्धि प्रस्ताव बढाएमा, (के स्मरण राख भने) अल्लाहले तिमीहरूका निम्ति तिनीहरूविरुद्ध (अग्रिमाक्रमणको) कुनै मार्ग राखेका छैनन् ।

سَتَجِدُوْنَ اٰخَرِيْنَ يُرِيْدُوْنَ اَنْ يَّاْمَنُوْكُمْ وَيَاْمَنُوْا قَوْمَهُمْ ؕ كُلَّمَا رُدُّوْٓا اِلَى الْفِتْنَةِ اُرْكِسُوْا فِيْهَا ۚ فَاِنْ لَّمْ يَعْتَزِلُوْكُمْ وَيُلْقُوْٓا اِلَيْكُمُ السَّلَمَ وَيَكُفُّوْٓا اَيْدِيَهُمْ فَخُذُوْهُمْ وَاقْتُلُوْهُمْ حَيْثُ ثَقِفْتُمُوْهُمْ ؕ وَاُولٰٓئِكُمْ جَعَلْنَا لَكُمْ عَلَيْهِمْ سُلْطٰنًا مُّبِيْنًا ﴿٩١﴾

९२. तिमीहरूले अवश्य अन्य यस्ता व्यक्तिहरू पाउनेछौ जो तिमीहरूबाट र आफ्ना मानिसहरूबाट पनि सुरक्षित रहन चाहन्छन् । जब जब तिनीहरूलाई शत्रुतातर्फ उन्मुख गराइन्छ, तिनीहरू त्यसमा उँधोमुन्टो गरी हाम फाल्छन् । अतः यदि तिनीहरू तिमीहरूबाट टाढा रहेनन् र तिमीहरूसँग सन्धि प्रस्ताव राखेनन् तथा आफ्ना हात रोकेनन् भने, तिनीहरूलाई पक र तिनीहरूलाई जहाँ भेट्छौ त्यहीं तिनीहरूको हत्या गर । यिनीहरूविरुद्ध हामीले तिमीहरूलाई पूर्ण अधिकार प्रदान गरेका छौं ।

وَمَا كَانَ لِمُؤْمِنٍ اَنْ يَّقْتُلَ مُؤْمِنًا اِلَّا خَطَـًٔا ۚ وَمَنْ قَتَلَ مُؤْمِنًا خَطَـًٔا فَتَحْرِيْرُ رَقَبَةٍ مُّؤْمِنَةٍ وَّدِيَةٌ مُّسَلَّمَةٌ اِلٰٓى اَهْلِهٖٓ اِلَّآ اَنْ يَّصَّدَّقُوْا ؕ فَاِنْ كَانَ مِنْ قَوْمٍ عَدُوٍّ لَّكُمْ وَهُوَ مُؤْمِنٌ فَتَحْرِيْرُ رَقَبَةٍ مُّؤْمِنَةٍ ؕ وَاِنْ كَانَ مِنْ قَوْمٍۭ بَيْنَكُمْ وَبَيْنَهُمْ مِّيْثَاقٌ فَدِيَةٌ مُّسَلَّمَةٌ اِلٰٓى اَهْلِهٖ وَتَحْرِيْرُ رَقَبَةٍ مُّؤْمِنَةٍ ۚ فَمَنْ لَّمْ يَجِدْ فَصِيَامُ شَهْرَيْنِ مُتَتَابِعَيْنِ ۫ تَوْبَةً مِّنَ اللّٰهِ ؕ وَكَانَ اللّٰهُ عَلِيْمًا حَكِيْمًا ﴿٩٢﴾

९३. एकजना विश्वासी व्यक्ति भूलचूकको स्थितिबाहेक कुनै विश्वासी व्यक्तिको हत्या गर्न सक्दैन । तथा जसले भूलचूकपूर्वक कुनै एक विश्वासी व्यक्तिको हत्या गर्छ भने उसले त्यसको सट्टा एकजना विश्वासी दासलाई मुक्त गर्नु पर्ने र रक्तमूल्य दिनु पर्ने हुन्छ, सिवाय जुन मूल्य त्यसका वारिसहरूलाई प्रदान गरिनेछ । तिनीहरूले दानस्वरूप माफ गरिदिएमा तथा यदि त्यो (हताहत भएको व्यक्ति) तिमीहरूका शत्रुपक्षको रहेमा र विश्वासी रहेमा, केवल एकजना विश्वासी दासलाई मुक्त गर्नु पर्नेछ; तथा यदि त्यो व्यक्ति तिमीहरूसित परस्पर सम्झौता गर्ने पक्षको रहेको भए, (दोषीले) रक्तमूल्य (दिनु पर्नेछ) जुन त्यसका वारिसहरूलाई प्रदान गरिनेछ,

तथा एकजना विश्वासी दासलाई मुक्त गर्नु पर्नेछ । परन्तु जसले त्यसको क्षमता राख्दैन, त्यसले दुई महिना निरन्तर उपवास बस्नु पर्नेछ यो अल्लाहले निर्धारण गरेको क्षमायाचनाको साधनस्वरूप हो । तथा अल्लाह सर्वज्ञ, तत्त्वज्ञ छन् ।

وَمَنْ يَّقْتُلْ مُؤْمِنًا مُّتَعَمِّدًا فَجَزَآؤُهٗ جَهَنَّمُ خٰلِدًا فِيْهَا وَغَضِبَ اللّٰهُ عَلَيْهِ وَلَعَنَهٗ وَاَعَدَّ لَهٗ عَذَابًا عَظِيْمًا ﴿٩٣﴾

९४. तथा जसले कुनै विश्वासी व्यक्तिको जानीबुझीकन हत्या गर्छ, त्यसको प्रतिफल नर्क हुनेछ जसमा त्यो बसोबास गर्नेछ । तथा अल्लाह त्यसप्रति क्रोधित हुनेछन् र त्यसलाई लाञ्छित गर्नेछन् तथा त्यसका निम्ति ठूलो दण्ड तयार गर्नेछन् ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْٓا اِذَا ضَرَبْتُمْ فِيْ سَبِيْلِ اللّٰهِ فَتَبَيَّنُوْا وَلَا تَقُوْلُوْا لِمَنْ اَلْقٰٓى اِلَيْكُمُ السَّلٰمَ لَسْتَ مُؤْمِنًا ۚ تَبْتَغُوْنَ عَرَضَ الْحَيٰوةِ الدُّنْيَا ۖ فَعِنْدَ اللّٰهِ مَغَانِمُ كَثِيْرَةٌ ۗ كَذٰلِكَ كُنْتُمْ مِّنْ قَبْلُ فَمَنَّ اللّٰهُ عَلَيْكُمْ فَتَبَيَّنُوْا ۗ اِنَّ اللّٰهَ كَانَ بِمَا تَعْمَلُوْنَ خَبِيْرًا ﴿٩٤﴾

९५. हे विश्वासीजन हो ! जब तिमीहरू अल्लाहका मार्गमा प्रस्थान गर्छौ, तब उचितरूपले जाँचपड्ताल गर्ने गर तथा जसले तिमीहरूप्रति शान्ति (सलाम) प्रकट गर्छ, त्यसलाई "तिमी विश्वासी हैनौ" भनी नभन । तिमीहरू यस जीवनको दौलत सम्पदाको अपेक्षा राख्छौ, परन्तु अल्लाहसँग प्रचूर वैभव रहेको छ । तिमीहरू (पनि) पहिला त्यस्तै थियौ, परन्तु अल्लाहले तिमीहरूप्रति (विशेष) अनुग्रह गरे, अतः तिमीहरू उचित अनुसन्धान गर्ने गर । जुन कार्य तिमीहरू गर्छौ त्यसप्रति अल्लाह निश्चय नै पूर्णविदित छन् ।

لَا يَسْتَوِى الْقٰعِدُوْنَ مِنَ الْمُؤْمِنِيْنَ غَيْرُ اُولِى الضَّرَرِ وَالْمُجٰهِدُوْنَ فِيْ سَبِيْلِ اللّٰهِ بِاَمْوَالِهِمْ وَاَنْفُسِهِمْ ۗ فَضَّلَ اللّٰهُ الْمُجٰهِدِيْنَ بِاَمْوَالِهِمْ وَاَنْفُسِهِمْ عَلَى الْقٰعِدِيْنَ دَرَجَةً ۗ وَكُلًّا وَّعَدَ اللّٰهُ الْحُسْنٰى ۗ وَفَضَّلَ اللّٰهُ الْمُجٰهِدِيْنَ عَلَى الْقٰعِدِيْنَ اَجْرًا عَظِيْمًا ﴿٩٥﴾

९६. विश्वासीजनमध्ये असमर्थ व्यक्तिहरूबाहेक चूपचाप बसिरहने विश्वासीहरू तथा अल्लाहका मार्गमा आफ्नो धन र आफ्नो ज्यू-ज्यान दिई संघर्ष गर्नेहरू बराबर हुन सक्दैनन् । अल्लाहले आफ्नो धन र आफ्नो ज्यू-ज्यानका साथ संघर्ष गर्ने व्यक्तिहरूलाई त्यसै बसिरहने व्यक्तिहरूभन्दा श्रेष्ठ दर्जा प्रदान गरेका छन् । तथा सबैलाई अल्लाहले भलाइको वचन दिएका छन् । तथा अल्लाहले संघर्ष गर्ने व्यक्तिहरूलाई बसिरहने व्यक्तिहरूभन्दा

महान प्रतिदानद्वारा श्रेष्ठता प्रदान गरेका छन् ।

९७. (जस्तै), उनका तर्फबाट विभिन्न दर्जाहरू (प्रदान हुनु) र (विशेष) क्षमादान तथा करुणा प्रदान हुनु हो । तथा अल्लाह परम क्षमाशील, परम करुणाशील छन् ।

دَرَجٰتٍ مِّنْهُ وَمَغْفِرَةً وَّرَحْمَةً ۭ وَكَانَ اللّٰهُ غَفُوْرًا رَّحِيْمًا ﴿٩٦﴾

९८. निश्चय नै, ती व्यक्तिहरू जसलाई फरिस्ताहरूले आफैंले आफ्ना आत्मामाथि अन्याय गरिरहको अवस्थामा मृत्यु प्रदान गर्छन्, तिनीहरूले (फरिस्ताहरूले उनीहरूलाई) भन्नेछन्, "तिमीहरू के को खोजीमा थियौ?" उनीहरूले उत्तर दिनेछन्, "हामीलाई मुलुककै दुर्बल ठानी व्यवहार गरिन्थ्यो ।" तिनीहरूले भन्नेछन्, "के अल्लाहको संसार त्यति विस्तृत थिएन जसमा तिमीहरू आप्रवास गर्न सक? यी तिनीहरू नै हुन् जसको ठेगाना नर्क हुनेछ, तथा त्यो एउटा अति नराम्रो गन्तव्यस्थान हो ।

اِنَّ الَّذِيْنَ تَوَفّٰىهُمُ الْمَلٰٓئِكَةُ ظَالِمِيْٓ اَنْفُسِهِمْ قَالُوْا فِيْمَ كُنْتُمْ ۭ قَالُوْا كُنَّا مُسْتَضْعَفِيْنَ فِي الْاَرْضِ ۭ قَالُوْٓا اَلَمْ تَكُنْ اَرْضُ اللّٰهِ وَاسِعَةً فَتُهَاجِرُوْا فِيْهَا ۭ فَاُولٰٓئِكَ مَاْوٰىهُمْ جَهَنَّمُ ۭ وَسَآءَتْ مَصِيْرًا ﴿٩٧﴾

९९. त्यस्ता दुर्बल पुरुषहरू, महिलाहरू तथा बालकहरूबाहेक जसले कुनै योजना साकार गर्न सक्दैनन् अथवा कुनै मार्ग पनि अवलम्बन गर्न सक्दैनन् ।

اِلَّا الْمُسْتَضْعَفِيْنَ مِنَ الرِّجَالِ وَالنِّسَآءِ وَالْوِلْدَانِ لَا يَسْتَطِيْعُوْنَ حِيْلَةً وَّلَا يَهْتَدُوْنَ سَبِيْلًا ﴿٩٨﴾

१००. सम्भवत: यस्ता व्यक्तिहरूलाई अल्लाहले पाप क्षमा गरिदिनेछन्, किनभने अल्लाह त्रुटिमार्जक (तथा) परम क्षमाशील छन् ।

فَاُولٰٓئِكَ عَسَى اللّٰهُ اَنْ يَّعْفُوَ عَنْهُمْ ۭ وَكَانَ اللّٰهُ عَفُوًّا غَفُوْرًا ﴿٩٩﴾

१०१. तथा जसले अल्लाहको मार्ग*मा आफ्नो देशबाट आप्रवास गर्छ त्यसले पृथ्वीमा धेरै आश्रयका स्थानहरू तथा प्रचुरता प्राप्त गर्नेछ । तथा जुन व्यक्तिले

وَمَنْ يُّهَاجِرْ فِيْ سَبِيْلِ اللّٰهِ يَجِدْ فِي الْاَرْضِ مُرٰغَمًا كَثِيْرًا وَّسَعَةً ۭ وَمَنْ يَّخْرُجْ مِنْۢ بَيْتِهٖ مُهَاجِرًا اِلَى

* अरबी शब्दावली 'फी सबीलिल्लाह' ( سَبِيْلِ اللّٰهِ ) को अर्थ अल्लाहका निम्ति अथवा अल्लाहको मार्गमा हो ।

اللَّهِ وَرَسُولِهِ ثُمَّ يُدْرِكْهُ الْمَوْتُ فَقَدْ وَقَعَ أَجْرُهُ عَلَى اللَّهِ ۗ وَكَانَ اللَّهُ غَفُورًا رَّحِيمًا ﴿١٠٠﴾

अल्लाह तथा उनका सन्देशवाहकका लागि आफ्नो घरबाट प्रस्थान गरी आप्रवास अवलम्बन गर्छ र त्यस अवस्थामा त्यसको मृत्यु हुन्छ, त्यसको प्रतिदान अल्लाहको जिम्मामा रहेको छ, तथा अल्लाह परम क्षमाशील, परम दानशील छन् ।

وَإِذَا ضَرَبْتُمْ فِي الْأَرْضِ فَلَيْسَ عَلَيْكُمْ جُنَاحٌ أَن تَقْصُرُوا مِنَ الصَّلَاةِ إِنْ خِفْتُمْ أَن يَفْتِنَكُمُ الَّذِينَ كَفَرُوا ۚ إِنَّ الْكَافِرِينَ كَانُوا لَكُمْ عَدُوًّا مُّبِينًا ﴿١٠١﴾

१०२. तथा जब तिमीहरू मुलुकमा भ्रमण गर्छौ, त्यस अवस्थामा तिमीहरूलाई अविश्वासी- हरूले दुःख देलान् कि भन्ने त्रास छ भने, नमाज छोट्ट्याएमा तिमीहरूलाई पाप लाग्नेछैन । निश्चय नै, अविश्वासीहरू तिमीहरूका खुल्लमखुल्ला शत्रु हुन् ।

وَإِذَا كُنتَ فِيهِمْ فَأَقَمْتَ لَهُمُ الصَّلَاةَ فَلْتَقُمْ طَائِفَةٌ مِّنْهُم مَّعَكَ وَلْيَأْخُذُوا أَسْلِحَتَهُمْ فَإِذَا سَجَدُوا فَلْيَكُونُوا مِن وَرَائِكُمْ وَلْتَأْتِ طَائِفَةٌ أُخْرَىٰ لَمْ يُصَلُّوا فَلْيُصَلُّوا مَعَكَ وَلْيَأْخُذُوا حِذْرَهُمْ وَأَسْلِحَتَهُمْ ۗ وَدَّ الَّذِينَ كَفَرُوا لَوْ تَغْفُلُونَ عَنْ أَسْلِحَتِكُمْ وَأَمْتِعَتِكُمْ فَيَمِيلُونَ عَلَيْكُم مَّيْلَةً وَاحِدَةً ۚ وَلَا جُنَاحَ عَلَيْكُمْ إِن كَانَ بِكُمْ أَذًى مِّن مَّطَرٍ أَوْ كُنتُم مَّرْضَىٰ أَن تَضَعُوا أَسْلِحَتَكُمْ ۖ وَخُذُوا حِذْرَكُمْ ۗ إِنَّ اللَّهَ أَعَدَّ لِلْكَافِرِينَ عَذَابًا مُّهِينًا ﴿١٠٢﴾

१०३. तब जब तिमी तिनीहरूसँग हुन्छौ र तिनीहरूलाई नमाज पढाउँछौ, तब तिनीहरूमध्ये एक दल व्यक्तिहरू तिमीसँग उभियून् र आफ्ना हतियार पनि उठाउन् । तथा जब तिनीहरूले दण्डवत् गरिसक्छन्, तब तिनीहरू तिम्रापछिल्तिर खडा रहून्, तथा अर्का दलका व्यक्तिहरू जसले नमाज पढ्न भ्याएको छैन तिनीहरू अघि बढून् र तिमीसँग नमाज पढून्, तथा तिनीहरूले आफ्ना सुरक्षा सामग्री तथा हात हतियार साथमा राखून् । अविश्वासीहरू तिमीहरूले आफ्ना हतियार तथा आफ्ना सरसामानबाट असावधान हुन्थयो भन्ने चाहना राख्छन् ताकि तिनीहरू अकस्मात् तिमीहरूमाथि आइलाग्न सकून् । तथा तिमीहरूलाई कुनै पाप लाग्नेछैन **यदि** वर्षाका कारण तिमीहरूलाई अप्ठेरो परेमा अथवा यदि तिमीहरू अ**स्वस्थ** अवस्थामा रहेमा आफ्ना हतियार अलग्ग राख । परन्तु तिमीहरू (सधैं) आफ्नो सुरक्षा साधन अवलम्बन गर्ने गर । अल्लाहले अविश्वासीहरूका निम्ति निश्चय नै अपमानजनक दण्ड तयार गरेका छन् ।

१०४. अनि जब तिमीहरू नमाज पाठ समापन गरिसक्छौ, अल्लाहलाई उभिएको, बसेको तथा ढल्किएको अवस्थामा स्मरण गर्ने गर, तथा जब तिमीहरू खतरामुक्त हुन्छौ त्यसपछि (निर्धारित गरिएको उपायले) नमाज अनुष्ठान गर, निश्चय नै, निर्धारित समयमा नमाज (अनुष्ठान गर्नु) विश्वासीहरूप्रति कर्तव्य निर्धारण गरिएको छ ।

فَإِذَا قَضَيْتُمُ الصَّلٰوةَ فَاذْكُرُوا اللّٰهَ قِيَامًا وَّقُعُوْدًا وَّعَلٰى جُنُوْبِكُمْ ۚ فَإِذَا اطْمَأْنَنْتُمْ فَأَقِيْمُوا الصَّلٰوةَ ۚ إِنَّ الصَّلٰوةَ كَانَتْ عَلَى الْمُؤْمِنِيْنَ كِتٰبًا مَّوْقُوْتًا ﴿١٠٣﴾

१०५. तथा यी मानिसहरूको खोजीमा तिमीहरू ढिला सुस्ती नगर । यदि तिमीहरूलाई कष्ट हुन्छ भने, तिनीहरूलाई पनि तिमीहरूलाई कष्ट भएझैं कष्ट हुन्छ । परन्तु तिमीहरू अल्लाहबाट आकाङ्क्षा राख्छौ जो तिनीहरूले राख्दैनन् । तथा अल्लाह सर्वज्ञ, तत्त्वज्ञ छन् ।

وَلَا تَهِنُوْا فِي ابْتِغَآءِ الْقَوْمِ ۖ إِنْ تَكُوْنُوْا تَأْلَمُوْنَ فَإِنَّهُمْ يَأْلَمُوْنَ كَمَا تَأْلَمُوْنَ ۚ وَتَرْجُوْنَ مِنَ اللّٰهِ مَا لَا يَرْجُوْنَ ۗ وَكَانَ اللّٰهُ عَلِيْمًا حَكِيْمًا ﴿١٠٤﴾

१०६. निश्चय नै हामीले तिमीप्रति सत्यमा आधारित किताब अवतीर्ण गरेका छौं, ताकि जुन कुरा अल्लाहले तिमीलाई सिकाएका छन्, त्यसद्वारा तिमी मानिसहरूका बीचमा निर्णय गर । तथा तिमी ती व्यक्तिहरूको जसले गबन गर्छन् वकालत नगर ।

إِنَّآ أَنْزَلْنَآ إِلَيْكَ الْكِتٰبَ بِالْحَقِّ لِتَحْكُمَ بَيْنَ النَّاسِ بِمَآ أَرٰىكَ اللّٰهُ ۚ وَلَا تَكُنْ لِّلْخَآئِنِيْنَ خَصِيْمًا ﴿١٠٥﴾

१०७. तथा अल्लाहसँग क्षमायाचना गर । अवश्यमेव अल्लाह परम क्षमाशील, परम दानशील छन् ।

وَّاسْتَغْفِرِ اللّٰهَ ۖ إِنَّ اللّٰهَ كَانَ غَفُوْرًا رَّحِيْمًا ﴿١٠٦﴾

१०८. तथा ती व्यक्तिहरूका पक्षमा तिमी वकालत नगर जसले स्वयम्सित बेइमानी गर्छन् । अल्लाह निश्चय नै अत्याधिक गबनकर्ता तथा घोरपापी व्यक्तिहरूलाई मन पराउँदैनन् ।

وَلَا تُجَادِلْ عَنِ الَّذِيْنَ يَخْتَانُوْنَ أَنْفُسَهُمْ ۚ إِنَّ اللّٰهَ لَا يُحِبُّ مَنْ كَانَ خَوَّانًا أَثِيْمًا ﴿١٠٧﴾

१०९. तिनीहरू मानिसहरूबाट गुप्त रहन चाहन्छन्, परन्तु अल्लाहबाट गुप्त रहन सक्दैनन् तथा जब तिनीहरू रात्रिमा उनले

يَّسْتَخْفُوْنَ مِنَ النَّاسِ وَلَا يَسْتَخْفُوْنَ مِنَ اللّٰهِ وَهُوَ مَعَهُمْ إِذْ

يُبَيِّتُونَ مَا لَا يَرْضَىٰ مِنَ الْقَوْلِ ۚ وَكَانَ اللَّهُ بِمَا يَعْمَلُونَ مُحِيطًا ﴿١٠٨﴾

स्वीकृति प्रदान नगरेका कुराहरूबारे षड्यन्त्र गरिरहेका हुन्छन्, तब (पनि) उनी तिनीहरूसँगै रहेका हुन्छन् । तथा जे तिनीहरू गर्छन् त्यसलाई अल्लाहले घेर्छन् ।

هَا أَنتُمْ هَٰؤُلَاءِ جَادَلْتُمْ عَنْهُمْ فِي الْحَيَاةِ الدُّنْيَا فَمَن يُجَادِلُ اللَّهَ عَنْهُمْ يَوْمَ الْقِيَامَةِ أَم مَّن يَكُونُ عَلَيْهِمْ وَكِيلًا ﴿١٠٩﴾

११०. हेर ! तिमीहरू तिनीहरू हौ जसले तिनीहरूका पक्षमा यस सांसारिक जीवनमा वकालत गरेका छौ । परन्तु पुनरुत्थानका दिन तिनीहरूका पक्षमा कसले अल्लाहसँग वकालत गर्नेछ, अथवा को तिनीहरूको प्रतिरक्षक हुनेछ?

وَمَن يَعْمَلْ سُوءًا أَوْ يَظْلِمْ نَفْسَهُ ثُمَّ يَسْتَغْفِرِ اللَّهَ يَجِدِ اللَّهَ غَفُورًا رَّحِيمًا ﴿١١٠﴾

१११. तथा जसले दुष्कर्म गर्छ अथवा आफ्नो आत्माप्रति अन्याय गर्छ, र त्यसपछि अल्लाहसँग क्षमायाचना गर्छ, त्यसले (अवश्य) अल्लाहलाई परम क्षमाशील, दानशीलको रूपमा पाउनेछ ।

وَمَن يَكْسِبْ خَطِيئَةً أَوْ إِثْمًا ثُمَّ يَرْمِ بِهِ بَرِيئًا فَقَدِ احْتَمَلَ بُهْتَانًا وَإِثْمًا مُّبِينًا ﴿١١٢﴾

११२. तथा जसले पाप गर्छ त्यसले केवल आफ्नै आत्माविरुद्ध त्यो (पाप) गर्छ । तथा अल्लाह सर्वज्ञ, तत्त्वज्ञ छन् ।

وَمَن يَكْسِبْ إِثْمًا فَإِنَّمَا يَكْسِبُهُ عَلَىٰ نَفْسِهِ ۚ وَكَانَ اللَّهُ عَلِيمًا حَكِيمًا ﴿١١١﴾

११३. तथा जसले कुनै भूल गर्छ अथवा पाप गर्छ, र त्यसपछि त्यसको दोष कुनै निर्दोष व्यक्तिमाथि लाउँछ भने, त्यसले अवश्य नै एउटा अपवाद तथा खुल्लमखुल्ला पापको (बोझ) उठाउँछ ।

وَلَوْلَا فَضْلُ اللَّهِ عَلَيْكَ وَرَحْمَتُهُ لَهَمَّت طَّائِفَةٌ مِّنْهُمْ أَن يُضِلُّوكَ وَمَا يُضِلُّونَ إِلَّا أَنفُسَهُمْ ۖ وَمَا يَضُرُّونَكَ مِن شَيْءٍ ۚ وَأَنزَلَ اللَّهُ عَلَيْكَ الْكِتَابَ وَالْحِكْمَةَ وَعَلَّمَكَ مَا لَمْ تَكُن تَعْلَمُ ۚ وَكَانَ فَضْلُ اللَّهِ عَلَيْكَ عَظِيمًا ﴿١١٣﴾

११४. तथा यदि अल्लाहको करुणा र उनको दया तिमीप्रति नरहेको भए, तिनीहरूमध्ये एउटा समुहले तिमीहरूलाई पथभ्रष्ट गर्ने पूर्णसंकल्प गरिसकेको थियो (परन्तु उनले तिनीहरूको योजनालाई असफल पारे) । वस्तुतः तिनीहरू आफैलाई बाहेक कसैलाई पथभ्रष्ट तुल्याउँदैनन् तथा तिनीहरूले तिम्रो केही हानि गर्न सक्दैनन् । अल्लाहले तिमीप्रति पुस्तक तथा तत्त्वज्ञान अवतीर्ण गरेका छन् तथा तिमीलाई त्यो कुरा सिकाएका छन्, जसको तिमीलाई ज्ञान

थिएन, तथा तिमीप्रति अल्लाहको ठूलो कृपा रहेको छ ।

لَا خَيْرَ فِيْ كَثِيْرٍ مِّنْ نَّجْوٰىهُمْ اِلَّا مَنْ اَمَرَ بِصَدَقَةٍ اَوْ مَعْرُوْفٍ اَوْ اِصْلَاحٍ بَيْنَ النَّاسِ ؕ وَ مَنْ يَّفْعَلْ ذٰلِكَ ابْتِغَآءَ مَرْضَاتِ اللّٰهِ فَسَوْفَ نُؤْتِيْهِ اَجْرًا عَظِيْمًا ﴿۱۱۴﴾

११५. तिनीहरूका गोप्य परामर्शहरूमा केही भलाइ हुँदैन सिवाय (त्योबाहेक) जब तिनीहरूले गरीबहरूका निम्ति खर्च गर्ने अथवा सार्वजनिक कल्याणकार्य गर्ने अथवा मेलमिलाप बढाउने र मानिसहरूका बीचमा सुधार गर्ने निश्चय गर्छन् । तथा जसले अल्लाहको प्रशन्नता प्राप्तिका निम्ति त्यसो गर्छ, हामी त्यसलाई शीघ्र नै महान पारितोषिक प्रदान गर्नेछौं ।

وَ مَنْ يُّشَاقِقِ الرَّسُوْلَ مِنْۢ بَعْدِ مَا تَبَيَّنَ لَهُ الْهُدٰى وَ يَتَّبِعْ غَيْرَ سَبِيْلِ الْمُؤْمِنِيْنَ نُوَلِّهٖ مَا تَوَلّٰى وَ نُصْلِهٖ جَهَنَّمَ ؕ وَ سَآءَتْ مَصِيْرًا ﴿۱۱۵﴾

११६. तथा त्यो व्यक्ति जसले मार्गदर्शन स्पष्टरूपमा प्रकट भएपश्चात् (पनि) सन्देशवाहकको विरोधाचरण गर्छ, तथा विश्वासीहरूको (मार्ग) छाडी अन्य कुनै मार्ग अनुसरण गर्छ भने हामी त्यसलाई त्यही मार्ग पच्छ्याउन दिनेछौं जसलाई त्यसले अपनाउँदै आएको छ, अनि हामी त्यसलाई नर्कमा निक्षेप गर्नेछौं, तथा त्यो एउटा अति निकृष्ट गन्तव्य स्थान हो ।

اِنَّ اللّٰهَ لَا يَغْفِرُ اَنْ يُّشْرَكَ بِهٖ وَ يَغْفِرُ مَا دُوْنَ ذٰلِكَ لِمَنْ يَّشَآءُ ؕ وَ مَنْ يُّشْرِكْ بِاللّٰهِ فَقَدْ ضَلَّ ضَلٰلًاۢ بَعِيْدًا ﴿۱۱۶﴾

११७. निश्चय नै अल्लाहले कुनै वस्तुलाई उनको भागीदार बनाउने कुरालाई क्षमा गर्नेछैनन्, परन्तु त्यस कुराबाहेक जसलाई चाहनेछन् उनी क्षमा प्रदान गर्नेछन् । तथा जुन व्यक्तिले कुनै वस्तुलाई अल्लाहको भागीदार बनाउँछ त्यो व्यक्ति निश्चय नै (अल्लाहको मार्गबाट) सुदूर विपथगामी भएर गयो ।

اِنْ يَّدْعُوْنَ مِنْ دُوْنِهٖۤ اِلَّاۤ اِنٰثًا ۚ وَ اِنْ يَّدْعُوْنَ اِلَّا شَيْطٰنًا مَّرِيْدًا ﴿۱۱۷﴾

११८. तिनीहरू उनलाई छाडी मिथ्या (निरर्थक) देवीहरूबाहेक अन्य कसैलाई पुकार्दैनन्, वास्तवमा तिनीहरू विद्रोही सैतानबाहेक अरू कसैलाई पुकार्दैनन् ।

لَّعَنَهُ اللّٰهُ ۘ وَ قَالَ لَاَتَّخِذَنَّ مِنْ عِبَادِكَ نَصِيْبًا مَّفْرُوْضًا ﴿۱۱۸﴾

११९. त्यसलाई (भने) अल्लाहले श्राप दिएका छन् । तथा उसले भनेको थियो, "म

तिम्रा भक्तहरूबाट अवश्य नै एउटा निर्धारित अंश हत्याउनेछु ,

وَلَأُضِلَّنَّهُمْ وَلَأُمَنِّيَنَّهُمْ وَلَآمُرَنَّهُمْ فَلَيُبَتِّكُنَّ آذَانَ الْأَنْعَامِ وَلَآمُرَنَّهُمْ فَلَيُغَيِّرُنَّ خَلْقَ اللَّهِ ۚ وَمَنْ يَتَّخِذِ الشَّيْطَانَ وَلِيًّا مِنْ دُونِ اللَّهِ فَقَدْ خَسِرَ خُسْرَانًا مُبِينًا ﴿١٢٠﴾

१२०. "तथा तिनीहरूलाई अवश्य नै विपथगामी तुल्याउनेछु तथा अवश्य नै तिनीहरूमा मिथ्या आकाङ्क्षा जगाउनेछु, तथा निश्चय नै म तिनीहरूलाई आदेश दिनेछु फलस्वरूप तिनीहरूले उँटका -तथा अन्य पशुका) कान छेड्नेछन्, तथा निश्चयपूर्वक म तिनीहरूलाई आदेश दिनेछु र तिनीहरूले अल्लाहका रृष्टिमा हेरफेर गर्नेछन् ।" तथा जसले अल्लाहलाई छाडी सैतानलाई मित्र बनाउँछ त्यो व्यक्ति ता निश्चय नै स्पष्ट घाटामा पर्‍यो ।

يَعِدُهُمْ وَيُمَنِّيهِمْ ۖ وَمَا يَعِدُهُمُ الشَّيْطَانُ إِلَّا غُرُورًا ﴿١٢١﴾

१२१. उसले तिनीहरूसँग वाचा गर्छ तथा तिनीहरूमा मिथ्या चाहना बढाउँछ, तथा सैतानले तिनीहरूसँग धोकापूर्ण कुराबाहेक अन्य केही कुराको वाचा गर्दैन ।

أُولَٰئِكَ مَأْوَاهُمْ جَهَنَّمُ وَلَا يَجِدُونَ عَنْهَا مَحِيصًا ﴿١٢٢﴾

१२२. यी तिनीहरू नै हुन् जसको निवास नर्क हुनेछ तथा तिनीहरूले त्यसबाट फुत्कने कुनै मार्ग पाउनेछैनन् ।

وَالَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ سَنُدْخِلُهُمْ جَنَّاتٍ تَجْرِي مِنْ تَحْتِهَا الْأَنْهَارُ خَالِدِينَ فِيهَا أَبَدًا ۖ وَعْدَ اللَّهِ حَقًّا ۚ وَمَنْ أَصْدَقُ مِنَ اللَّهِ قِيلًا ﴿١٢٣﴾

१२३. परन्तु ती व्यक्तिहरू जसले विश्वास गर्छन् तथा उत्तम कार्य गर्ने गर्छन्, हामी तिनीहरूलाई त्यस्ता बगैंचामा दाखिल गर्नेछौं जसमनि नहरहरू बगिरहेछन्, तिनीहरू त्यहाँ सदा बसोबास गर्नेछन् । यो अल्लाहको पक्का बचन हो, तथा अल्लाहभन्दा वचनमा अन्य को सत्यवादी हुन सक्छन् र?

لَيْسَ بِأَمَانِيِّكُمْ وَلَا أَمَانِيِّ أَهْلِ الْكِتَابِ ۗ مَنْ يَعْمَلْ سُوءًا يُجْزَ بِهِ وَلَا يَجِدْ لَهُ مِنْ دُونِ اللَّهِ وَلِيًّا وَلَا نَصِيرًا ﴿١٢٤﴾

१२४. यो न त तिमीहरूको इच्छानुसार हुनेछ, न पुस्तकप्राप्त व्यक्तिहरूको इच्छानुसार नै हुनेछ । जुन व्यक्तिले कुनै दुष्कार्य गर्छ त्यसको प्रतिफल उसलाई प्रदान गरिनेछ, तथा उसले अल्लाहबाहेक आफ्ना निम्ति न कुनै मित्र प्राप्त गर्नेछ न

त कुनै सहायक ।

वَمَنْ يَّعْمَلْ مِنَ الصّٰلِحٰتِ مِنْ ذَكَرٍ اَوْ اُنْثٰى وَهُوَ مُؤْمِنٌ فَاُولٰٓئِكَ يَدْخُلُوْنَ الْجَنَّةَ وَلَا يُظْلَمُوْنَ نَقِيْرًا ﴿١٢٤﴾

१२५. परन्तु जसले पुण्यकार्य गर्छ, चाहे त्यो पुरुष होस् अथवा महिला, र त्यो विश्वासी छ भने, त्यस्ता व्यक्तिहरू स्वर्गमा प्रवेश गर्नेछन्, तथा तिनीहरूमाथि खजुरको कोयाको छिद्र बराबर पनि अन्याय गरिनेछैन ।

وَمَنْ اَحْسَنُ دِيْنًا مِّمَّنْ اَسْلَمَ وَجْهَهٗ لِلّٰهِ وَهُوَ مُحْسِنٌ وَّاتَّبَعَ مِلَّةَ اِبْرٰهِيْمَ حَنِيْفًا ۗ وَاتَّخَذَ اللّٰهُ اِبْرٰهِيْمَ خَلِيْلًا ﴿١٢٥﴾

१२६. तथा त्यो व्यक्तिभन्दा आस्थामा (धर्ममा) को उत्तम हुन सक्छ र जसले स्वयम्लाई अल्लाहप्रति समर्पित गर्छ र पुण्यकार्य गर्ने गर्छ तथा सत्यव्रत इब्राहिमको धर्मको अनुसरण गर्छ, तथा अल्लाहले इब्राहिमलाई विशेष मित्रको रूपमा लिएका थिए ।

وَلِلّٰهِ مَا فِى السَّمٰوٰتِ وَمَا فِى الْاَرْضِ ۗ وَكَانَ اللّٰهُ بِكُلِّ شَيْءٍ مُّحِيْطًا ﴿١٢٦﴾

१२७. अनि आकाशमण्डल र पृथ्वीमा जे जति छन् ती सम्पूर्ण वस्तुहरू अल्लाहकै हुन्, तथा सम्पूर्ण वस्तुहरूलाई अल्लाहले घेरेर राखेका छन् ।

وَيَسْتَفْتُوْنَكَ فِى النِّسَاۤءِ ۗ قُلِ اللّٰهُ يُفْتِيْكُمْ فِيْهِنَّ ۙ وَمَا يُتْلٰى عَلَيْكُمْ فِى الْكِتٰبِ فِيْ يَتٰمَى النِّسَاۤءِ الّٰتِيْ لَا تُؤْتُوْنَهُنَّ مَا كُتِبَ لَهُنَّ وَتَرْغَبُوْنَ اَنْ تَنْكِحُوْهُنَّ وَالْمُسْتَضْعَفِيْنَ مِنَ الْوِلْدَانِ ۙ وَاَنْ تَقُوْمُوْا لِلْيَتٰمٰى بِالْقِسْطِ ۗ وَمَا تَفْعَلُوْا مِنْ خَيْرٍ فَاِنَّ اللّٰهَ كَانَ بِهٖ عَلِيْمًا ﴿١٢٧﴾

१२८. तथा तिनीहरू तिमीसँगम हिलाहरूबारे (विधानको) आदेश जान्न चाहन्छन् । तिमी भन, अल्लाह तिनीहरूबारे आफ्नो आदेश तिमीहरूलाई दिन्छन् । तथा यसै प्रकार ती टुहुरा महिलाहरूका सम्बन्धमा जसलाई तिमीहरू तिनीहरूका निम्ति निर्धारित गरिएको (कुरो) प्रदान गर्दैनौ, तथा तिनीहरूसँग विवाह गर्न चाहन्छौ, तथा दुर्बल बालबालिकाका (सम्बन्धमा पनि) यस पुस्तकमा तिमीहरूलाई आदेश पाठ गरेर सुनाइएको छ । तथा (उनले तिमीहरूलाई) टुहुराहरूसँग न्यायपूर्ण व्यवहार गर्ने (उपदेश दिन्छन्) । तथा जुन पुण्यकार्य तिमीहरू गर्छौ, अल्लाहले निश्चय नै त्यसलाई राम्ररी जान्दछन् ।

وَاِنِ امْرَاَةٌ خَافَتْ مِنْۢ بَعْلِهَا نُشُوْزًا اَوْ اِعْرَاضًا فَلَا جُنَاحَ عَلَيْهِمَاۤ اَنْ يُّصْلِحَا بَيْنَهُمَا صُلْحًا ؕ وَ الصُّلْحُ خَيْرٌ ؕ وَ اُحْضِرَتِ الْاَنْفُسُ الشُّحَّ ؕ وَ اِنْ تُحْسِنُوْا وَ تَتَّقُوْا فَاِنَّ اللّٰهَ كَانَ بِمَا تَعْمَلُوْنَ خَبِيْرًا ﴿۱۲۸﴾

१२९. तथा यदि कुनै महिलालाई आफ्ना पतिका तर्फबाट दुर्व्यवहार अथवा भेदभावपूर्ण व्यवहारको आशङ्का रहेमा तिनीहरू दुबैले परस्पर उपयोगी ढंगले सन्धि गर्नाले तिनीहरूमाथि कुनै पाप लाग्नेछैन, तथा मेल नै सर्वोत्तम रहेको छ । तथा मानिसहरूको (मन) कृपणतातर्फ आकर्षित गरिएको छ । यदि तिमीहरूले पुण्यकर्म गरेमा र अल्लाहसित डराएमा अल्लाह निश्चय नै तिमीहरूका कार्यहरूप्रति विदित रहेका छन् ।

وَلَنْ تَسْتَطِيْعُوْۤا اَنْ تَعْدِلُوْا بَيْنَ النِّسَآءِ وَلَوْ حَرَصْتُمْ فَلَا تَمِيْلُوْا كُلَّ الْمَيْلِ فَتَذَرُوْهَا كَالْمُعَلَّقَةِ ؕ وَاِنْ تُصْلِحُوْا وَتَتَّقُوْا فَاِنَّ اللّٰهَ كَانَ غَفُوْرًا رَّحِيْمًا ﴿۱۲۹﴾

१३०. तथा तिमीहरूको प्रवल इच्छा रहे तापनि तिमीहरूले पत्नीहरूका बीचमा पूर्ण सन्तुलन कायम गर्न सक्दैनौ । त्यसकारण तिमीहरू पूर्णरूपले एउटीतर्फ नझुक, कदाचित अन्यलाई भने सोधपुछ र रेखदेख-बिना टाँगिएको अवस्थामा नछाडियोस् । तथा यदि तिमीहरूले (आचरणमा) सुधार गर्‍यौ र पुण्याचरण गर्‍यौ भने, अल्लाह निश्चय नै परम क्षमाशील, दानशील छन् ।

وَاِنْ يَّتَفَرَّقَا يُغْنِ اللّٰهُ كُلًّا مِّنْ سَعَتِهٖ ؕ وَكَانَ اللّٰهُ وَاسِعًا حَكِيْمًا ﴿۱۳۰﴾

१३१. तथा यदि तिनीहरू परस्पर अलग्ग भएर रहेमा अल्लाहले तिनीहरू दुबैलाई आफ्नो अपूर्व समृद्धि (अनुग्रह)द्वारा आत्मनिर्भर तुल्याउने छन्, तथा अल्लाह अति दानशील, तत्त्वज्ञ छन् ।

وَلِلّٰهِ مَا فِى السَّمٰوٰتِ وَمَا فِى الْاَرْضِ ؕ وَلَقَدْ وَصَّيْنَا الَّذِيْنَ اُوْتُوا الْكِتٰبَ مِنْ قَبْلِكُمْ وَاِيَّاكُمْ اَنِ اتَّقُوا اللّٰهَ ؕ وَاِنْ تَكْفُرُوْا فَاِنَّ لِلّٰهِ مَا فِى السَّمٰوٰتِ وَمَا فِى الْاَرْضِ ؕ وَكَانَ اللّٰهُ غَنِيًّا حَمِيْدًا ﴿۱۳۱﴾

१३२. आकाशमण्डल र पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरू अल्लाहकै हुन् । तथा हामीले ती व्यक्तिहरू जसलाई तिमीहरूभन्दा पहिला पुस्तक प्रदान गरिएको थियो र तिमीहरूलाई पनि अल्लाहसित डराऊ भनी निश्चयात्मक आदेश दिएकाछौं । परन्तु यदि तिमीहरूले अविश्वास गर्‍यौं भने, (यो जानी राख), आकाशमण्डल तथा पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरू अल्लाहकै हुन्, तथा अल्लाह

अभावरहित, प्रशंसनीय हुन् ।

१३३. तथा आकाशमण्डल र पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरू अल्लाहकै हुन् तथा संरक्षकको रूपमा अल्लाह नै पर्याप्त रहेका छन् ।

وَلِلّٰهِ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْاَرْضِ ۚ وَكَفٰى بِاللّٰهِ وَكِيْلًا ﴿١٣٢﴾

१३४. हे मानिसहरू हो ! यदि उनले चाहे भने, तिमीहरूलाई लगेर (तिमीहरूका स्थानमा) अन्य व्यक्तिहरूलाई स्थापन गर्नसक्छन्, तथा यस कार्यका निम्ति अल्लाहपूर्ण समर्थवान् छन् ।

اِنْ يَّشَاْ يُذْهِبْكُمْ اَيُّهَا النَّاسُ وَيَاْتِ بِاٰخَرِيْنَ ۚ وَكَانَ اللّٰهُ عَلٰى ذٰلِكَ قَدِيْرًا ﴿١٣٣﴾

१३५. जसले यस संसारको प्रतिदान चाहन्छ, (त्यसले) अल्लाहसँग यस संसारको र परलोकको पनि प्रतिदान छ (भनी स्मरण राखोस्), तथा अल्लाह परमश्रोता, परमदृष्टा छन् ।

مَنْ كَانَ يُرِيْدُ ثَوَابَ الدُّنْيَا فَعِنْدَ اللّٰهِ ثَوَابُ الدُّنْيَا وَالْاٰخِرَةِ ۚ وَكَانَ اللّٰهُ سَمِيْعًا بَصِيْرًا ﴿١٣٤﴾

१३६. हे विश्वासीजन हो ! तिमीहरू अल्लाहका निम्ति साक्षी बनी न्यायका दृढ निरीक्षक बन, चाहे त्यो तिमीहरू आफैका विपरित अथवा मातापिता तथा नातेदारका (विपरित) नै किन नहोस् । चाहे त्यो व्यक्ति धनी होस् अथवा निर्धन, (तिमीहरूभन्दा) अल्लाह तिनीहरू दुबैका लागि अधिक शुभचिन्तक रहेका छन् । त्यसकारण निकृष्ट चाहनाहरूका पछि नलाग ताकि तिमीहरू न्याय गर्न सक । तथा यदि तिमीहरूले (सत्यलाई) गोपनीय राख्यौ अथवा (त्यसबाट) पलायन गर्‍यौ भने, जुन कार्य तिमीहरू गर्छौ, त्यसप्रति अल्लाह पूर्णविदित छन् (भनी स्मरण राख) ।

يٰۤاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا كُوْنُوْا قَوّٰمِيْنَ بِالْقِسْطِ شُهَدَآءَ لِلّٰهِ وَلَوْ عَلٰۤى اَنْفُسِكُمْ اَوِ الْوَالِدَيْنِ وَالْاَقْرَبِيْنَ ۚ اِنْ يَّكُنْ غَنِيًّا اَوْ فَقِيْرًا فَاللّٰهُ اَوْلٰى بِهِمَا ۫ فَلَا تَتَّبِعُوا الْهَوٰۤى اَنْ تَعْدِلُوْا ۚ وَاِنْ تَلْوٗۤا اَوْ تُعْرِضُوْا فَاِنَّ اللّٰهَ كَانَ بِمَا تَعْمَلُوْنَ خَبِيْرًا ﴿١٣٥﴾

१३७. हे विश्वासीजन हो ! अल्लाहप्रति तथा उनका सन्देशवाहकप्रति विश्वास गर, तथा त्यस पुस्तकप्रति विश्वास गर, जुन उनले आफ्ना सन्देशवाहकप्रति अवतीर्ण गरेका छन् र त्यस पुस्तकप्रति जुन उनले

يٰۤاَيُّهَا الَّذِيْنَ اٰمَنُوْۤا اٰمِنُوْا بِاللّٰهِ وَرَسُوْلِهٖ وَالْكِتٰبِ الَّذِيْ نَزَّلَ عَلٰى رَسُوْلِهٖ وَالْكِتٰبِ الَّذِيْۤ اَنْزَلَ مِنْ

قَبْلُ ۚ وَمَن يَكْفُرْ بِاللَّهِ وَمَلَائِكَتِهِ وَكُتُبِهِ وَرُسُلِهِ وَالْيَوْمِ الْآخِرِ فَقَدْ ضَلَّ ضَلَالًا بَعِيدًا ﴿١٣٦﴾

त्यसभन्दा अघि अवतीर्ण गरेका थिए । तथा जसले अल्लाहप्रति र उनका फरिस्ताहरूप्रति तथा उनका पुस्तकहरूप्रति र उनका सन्देशवाहकहरूप्रति र प्रलयको दिनप्रति अविश्वास गर्छ, त्यो व्यक्ति निश्चय नै सुदूर विपथगामी भएर गयो ।

إِنَّ الَّذِينَ آمَنُوا ثُمَّ كَفَرُوا ثُمَّ آمَنُوا ثُمَّ كَفَرُوا ثُمَّ ازْدَادُوا كُفْرًا لَّمْ يَكُنِ اللَّهُ لِيَغْفِرَ لَهُمْ وَلَا لِيَهْدِيَهُمْ سَبِيلًا ﴿١٣٧﴾

१३८. ती व्यक्तिहरू जसले विश्वास स्थापना गर्छन्, त्यसपश्चात् अविश्वास गर्छन्, त्यसपश्चात् (पुनः) विश्वास स्थापना गर्छन्, फेरि अविश्वास गर्छन् (र) त्यसपश्चात् अविश्वासमा अघि बढ्दै जान्छन्, तिनीहरूलाई अल्लाहले कदापि क्षमा प्रदान गर्नेछैनन् न त तिनीहरूलाई उनले मार्ग नै प्रदर्शन गर्नेछन् ।

بَشِّرِ الْمُنَافِقِينَ بِأَنَّ لَهُمْ عَذَابًا أَلِيمًا ﴿١٣٨﴾

१३९. ढोंगीहरूलाई तिमी तिनीहरूका निम्ति पीडादायक दण्ड रहेको छ भनी जानकारी देऊ,

الَّذِينَ يَتَّخِذُونَ الْكَافِرِينَ أَوْلِيَاءَ مِن دُونِ الْمُؤْمِنِينَ ۚ أَيَبْتَغُونَ عِندَهُمُ الْعِزَّةَ فَإِنَّ الْعِزَّةَ لِلَّهِ جَمِيعًا ﴿١٣٩﴾

१४०. ती व्यक्तिहरू जसले विश्वासीजनलाई छाडी अविश्वासीहरूलाई मित्र बनाउँछन् । के तिनीहरूले उनीहरूबाट सम्मान प्राप्त गर्न चाहन्छन्: त्यसो भए सम्पूर्ण सम्मान अल्लाहकै रहेको छ -भनी तिनीहरूले स्मरण राखून्) ।

وَقَدْ نَزَّلَ عَلَيْكُمْ فِي الْكِتَابِ أَنْ إِذَا سَمِعْتُمْ آيَاتِ اللَّهِ يُكْفَرُ بِهَا وَيُسْتَهْزَأُ بِهَا فَلَا تَقْعُدُوا مَعَهُمْ حَتَّىٰ يَخُوضُوا فِي حَدِيثٍ غَيْرِهِ ۚ إِنَّكُمْ إِذًا مِّثْلُهُمْ ۗ إِنَّ اللَّهَ جَامِعُ الْمُنَافِقِينَ وَالْكَافِرِينَ فِي جَهَنَّمَ جَمِيعًا ﴿١٤٠﴾

१४१. तथा (यो कुरा) उनले पहिला नै यस पुस्तकमा तिमीहरूप्रति अवतीर्ण गरिसकेका छन् अर्थात्, जब अल्लाहका चिह्नहरूको अवज्ञा गरिएको तथा तिनीहरूप्रति ठट्टा गर्दै गरिएको सुन्यौ भने तिनीहरूसँग तबसम्म नबस जबसम्म तिनीहरू त्यस विषयलाई छाडी अन्य कुरामा व्यस्त हुँदैनन् । त्यसो गरेमा तिमीहरू पनि तिनीहरूसरह हुनेछौ । निश्चय नै अल्लाहले ढोंगीहरू तथा अविश्वासीहरूलाई नर्कमा एकत्रित गरी

छाड्ने छन् ।

إِلَّذِيْنَ يَتَرَبَّصُوْنَ بِكُمْ ۚ فَإِنْ كَانَ لَكُمْ فَتْحٌ مِّنَ اللّٰهِ قَالُوْٓا اَلَمْ نَكُنْ مَّعَكُمْ ۚ وَ اِنْ كَانَ لِلْكٰفِرِيْنَ نَصِيْبٌ ۙ قَالُوْٓا اَلَمْ نَسْتَحْوِذْ عَلَيْكُمْ وَ نَمْنَعْكُمْ مِّنَ الْمُؤْمِنِيْنَ ؕ فَاللّٰهُ يَحْكُمُ بَيْنَكُمْ يَوْمَ الْقِيٰمَةِ ؕ وَ لَنْ يَّجْعَلَ اللّٰهُ لِلْكٰفِرِيْنَ عَلَى الْمُؤْمِنِيْنَ سَبِيْلًا ﴿١٤١﴾

१४२. ती व्यक्तिहरू जुन तिमीहरूका सम्बन्धमा (कुनै खबरको) प्रतिक्षामा रहन्छन्, यदि तिमीहरूलाई अल्लाहका तर्फबाट कुनै विजय प्राप्त भएमा तिनीहरू भन्छन्, "के हामी पनि तिमीहरूसँग थिएनौं र? तथा यदि अविश्वासीहरूलाई (त्यसबाट) कुनै अंश प्राप्त भएमा, तिनीहरू (उनीहरूलाई) भन्छन्, "के हामीलाई तिमीहरूमाथि मौका प्राप्त भएको थिएन र? तथा हामीले तिमीहरूलाई विश्वासीहरूबाट बचाएका थिएनौ? अल्लाहले पुनरुत्थानका दिन तिमीहरूका बीचमा निर्णय गर्नेछन्, तथा अल्लाहले अविश्वासीहरूलाई विश्वासीहरूका विरुद्धमा -विजयको) कुनै मार्ग प्रदान गर्नेछैनन् ।

اِنَّ الْمُنٰفِقِيْنَ يُخٰدِعُوْنَ اللّٰهَ وَهُوَ خَادِعُهُمْ ۚ وَاِذَا قَامُوْٓا اِلَى الصَّلٰوةِ قَامُوْا كُسَالٰى ۙ يُرَآءُوْنَ النَّاسَ وَلَا يَذْكُرُوْنَ اللّٰهَ اِلَّا قَلِيْلًا ﴿١٤٢﴾

१४३. ढोंगीहरू अल्लाहलाई धोका दिन चाहन्छन्, परन्तु उनले तिनीहरूलाई आफै धोकाग्रस्त हुने (अवस्थामा) पार्नेछन् । तथा जब तिनीहरू नमाज (पढ्न)का निम्ति उभिन्छन्, तिनीहरू अरूलाई देखाउनका निम्ती अल्छी चालले उभिने गर्छन् । तथा तिनीहरूले अल्लाहलाई कमैमात्र स्मरण गर्ने गर्छन् ।

مُّذَبْذَبِيْنَ بَيْنَ ذٰلِكَ ۖ لَآ اِلٰى هٰٓؤُلَآءِ وَلَآ اِلٰى هٰٓؤُلَآءِ ؕ وَمَنْ يُّضْلِلِ اللّٰهُ فَلَنْ تَجِدَ لَهٗ سَبِيْلًا ﴿١٤٣﴾

१४४. तिनीहरू (यता र) उता लर्बरिन्छन्, तिनीहरू न त यिनीहरूका (साथमा) हुन्छन् न उनका साथमा । तथा अल्लाहले जसलाई सत्यनाश गर्छन् त्यसका निम्ति तिमीले कदापि कुनै मार्ग पाउनेछैनौ ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا لَا تَتَّخِذُوا الْكٰفِرِيْنَ اَوْلِيَآءَ مِنْ دُوْنِ الْمُؤْمِنِيْنَ ؕ اَتُرِيْدُوْنَ اَنْ تَجْعَلُوْا لِلّٰهِ عَلَيْكُمْ سُلْطٰنًا مُّبِيْنًا ﴿١٤٤﴾

१४५. हेविश्वासीजनहो ! विश्वासीहरूलाई छाडी अविश्वासीहरूलाई मित्र नबनाऊ । के तिमीहरू स्वयम्विरुद्ध अल्लाहलाई स्पष्ट सबूत प्रदान गर्न चाहन्छौ?

اِنَّ الْمُنٰفِقِيْنَ فِى الدَّرْكِ الْاَسْفَلِ مِنَ

१४६. ती ढोंगी व्यक्तिहरू निश्चय नै

النَّارِ ۚ وَلَن تَجِدَ لَهُمْ نَصِيرًا ﴿١٤٦﴾

अग्निकुण्डको अन्तिम गहिराइमा पुग्नेछन्, तथा तिमीले तिनीहरूका निम्ति कुनै सहयोगी पाउनेछेनौ,

إِلَّا الَّذِينَ تَابُوا وَأَصْلَحُوا وَاعْتَصَمُوا بِاللَّهِ وَأَخْلَصُوا دِينَهُمْ لِلَّهِ فَأُولَٰئِكَ مَعَ الْمُؤْمِنِينَ ۖ وَسَوْفَ يُؤْتِ اللَّهُ الْمُؤْمِنِينَ أَجْرًا عَظِيمًا ﴿١٤٧﴾

१४७. ती व्यक्तिहरूबाहेक जसले प्रायश्चित गर्छन् तथा (आचरणमा) संशोधन गर्छन् र दृढतापूर्वक अल्लाहलाई समात्छन् तथा अल्लाहको आज्ञाकारितामा निष्कपट (भएर) लाग्छन् । यिनीहरू विश्वासीजनहरू मध्ये रहेका छन् । तथा अल्लाहले चाँडै नै विश्वासीजनहरूलाई ठूलो प्रतिदान प्रदान गर्नेछन् ।

مَّا يَفْعَلُ اللَّهُ بِعَذَابِكُمْ إِن شَكَرْتُمْ وَآمَنتُمْ ۚ وَكَانَ اللَّهُ شَاكِرًا عَلِيمًا ﴿١٤٨﴾

१४८. यदि तिमीहरू कृतज्ञ तथा विश्वासी रहेमा अल्लाहले तिमीहरूलाई दण्ड किन दिनेछन् र? तथा अल्लाह गुणग्राही, सर्वज्ञ छन् ।

لَّا يُحِبُّ اللَّهُ الْجَهْرَ بِالسُّوءِ مِنَ الْقَوْلِ إِلَّا مَن ظُلِمَ ۚ وَكَانَ اللَّهُ سَمِيعًا عَلِيمًا ﴿١٤٩﴾

१४९. जुन व्यक्तिमाथि अन्याय भएको छ, त्यसलेबाहेक (अन्य कसैले) सार्वजनिक रूपमा व्यक्त गरेको अशिष्ट भाषालाई अल्लाहले मन पराउँदैनन् । निश्चय नै अल्लाह सर्वश्रोता, सर्वज्ञ छन् ।

إِن تُبْدُوا خَيْرًا أَوْ تُخْفُوهُ أَوْ تَعْفُوا عَن سُوءٍ فَإِنَّ اللَّهَ كَانَ عَفُوًّا قَدِيرًا ﴿١٥٠﴾

१५०. चाहे तिमीहरू कुनै पुण्यकार्यलाई प्रकाशित गर अथवा त्यसलाई गोप्य राख, अथवा दुष्कार्यलाई माफ गर, अल्लाह अवश्य नै पाप मोचनकारी (तथा) सर्वशक्तिमान छन् ।

إِنَّ الَّذِينَ يَكْفُرُونَ بِاللَّهِ وَرُسُلِهِ وَيُرِيدُونَ أَن يُفَرِّقُوا بَيْنَ اللَّهِ وَرُسُلِهِ وَيَقُولُونَ نُؤْمِنُ بِبَعْضٍ وَنَكْفُرُ بِبَعْضٍ وَيُرِيدُونَ أَن يَتَّخِذُوا بَيْنَ ذَٰلِكَ سَبِيلًا ﴿١٥١﴾

१५१. अवश्य नै, जसले अल्लाह तथा उनका सन्देशवाहकहरू प्रति अविश्वास गर्छन् तथा अल्लाह र उनका सन्देशवाहकहरूका बीचमा विभेद उत्पन्न गर्न चाहन्छन्, तथा भन्छन् "हामी केही प्रति विश्वास गर्छौं," तथा अन्य केहीप्रति अविश्वास गर्छौं, तथा यसका बीचोबीच कुनै मार्ग अवलम्बन गर्न चाहन्छन् ।

اُولٰٓئِكَ هُمُ الْكٰفِرُوْنَ حَقًّا ۚ وَاَعْتَدْنَا لِلْكٰفِرِيْنَ عَذَابًا مُّهِيْنًا ﴿١٥١﴾

१५२. यिनीहरू निःस्सन्देह पक्का अविश्वासी हुन्, तथा अविश्वासीहरूका निम्ति हामीले अपमानजनक दण्ड तयार गरेका छौं ।

وَالَّذِيْنَ اٰمَنُوْا بِاللّٰهِ وَرُسُلِهٖ وَلَمْ يُفَرِّقُوْا بَيْنَ اَحَدٍ مِّنْهُمْ اُولٰٓئِكَ سَوْفَ يُؤْتِيْهِمْ اُجُوْرَهُمْ ۗ وَكَانَ اللّٰهُ غَفُوْرًا رَّحِيْمًا ﴿١٥٢﴾

१५३. तथा ती व्यक्तिहरू जसले अल्लाह र उनका (सम्पूर्ण) सन्देशबाहहरूप्रति विश्वास गर्छन् तथा तिनीहरूमध्ये कसैका बीचमा विभेद गर्दैनन् यिनीहरू नै ती व्यक्तिहरू हुन् जसलाई अल्लाहले चाँडैनै तिनीहरूको पारितोषिक प्रदान गर्नेछन् । तथा अल्लाह परम क्षमाशील, परम दानशील छन् ।

يَسْـَٔلُكَ اَهْلُ الْكِتٰبِ اَنْ تُنَزِّلَ عَلَيْهِمْ كِتٰبًا مِّنَ السَّمَآءِ فَقَدْ سَاَلُوْا مُوْسٰٓى اَكْبَرَ مِنْ ذٰلِكَ فَقَالُوْٓا اَرِنَا اللّٰهَ جَهْرَةً فَاَخَذَتْهُمُ الصّٰعِقَةُ بِظُلْمِهِمْ ۚ ثُمَّ اتَّخَذُوا الْعِجْلَ مِنْۢ بَعْدِ مَا جَآءَتْهُمُ الْبَيِّنٰتُ فَعَفَوْنَا عَنْ ذٰلِكَ ۚ وَاٰتَيْنَا مُوْسٰى سُلْطٰنًا مُّبِيْنًا ﴿١٥٣﴾

१५४. पुस्तकप्राप्त व्यक्तिहरू तिमीसँग उनीहरूप्रति स्वर्गबाट एउटा पुस्तक अवतीर्ण गर्ने माग गर्छन् । तिनीहरूले मूसासँग त्यो भन्दा ठूलो कुराको माग गरेका थिए ! तिनीहरूले भनेका थिए, "हामीलाई प्रत्यक्षरूपमा अल्लाह देखाउ" । तब तिनीहरूको अत्याचारकै कारण तिनीहरूलाई विनाशकारी दण्डले पक्रियो । त्यसपछि तिनीहरूसमक्ष स्पष्ट चिह्नहरूको आगमनपश्चात् तिनीहरूले बाछ्रालाई (उपास्य) तुल्याए, परन्तु हामीले त्यसप्रति (पनि) माफ गरिदियौं । तथा हामीले मूसालाई स्पष्ट प्रभावकारी तर्क प्रदान गर्‍यौं ।

وَرَفَعْنَا فَوْقَهُمُ الطُّوْرَ بِمِيْثَاقِهِمْ وَقُلْنَا لَهُمُ ادْخُلُوا الْبَابَ سُجَّدًا وَّقُلْنَا لَهُمْ لَا تَعْدُوْا فِى السَّبْتِ وَاَخَذْنَا مِنْهُمْ مِّيْثَاقًا غَلِيْظًا ﴿١٥٤﴾

१५५. तथा तिनीहरूबाट अङ्गीकार लिँदै हामीले तिनीहरूका सामुन्ने (तूर) पर्वतलाई खडा गर्‍यौं, तथा "तिमीहरू विनम्रताका साथ त्यस ढोकाबाट प्रवेश गर," तथा हामीले तिनीहरूलाई भन्यौं हामीले तिनीहरूलाई भन्यौं "सबतको (मामिलामा) उल्लङ्घन नगर ।" तथा तिनीहरूबाट हामीले एउटा दृढअङ्गीकार लियौं ।

فَبِمَا نَقْضِهِمْ مِّيْثَاقَهُمْ وَكُفْرِهِمْ

१५६. तत्पश्चात्, तिनीहरूले आफ्नो अङ्गीकार भङ्ग गरेको, तथा तिनीहरूले

بِاٰيٰتِ اللّٰهِ وَقَتْلِهِمُ الْاَنْۢبِيَآءَ بِغَيْرِ حَقٍّ وَّقَوْلِهِمْ قُلُوْبُنَا غُلْفٌ ؕ بَلْ طَبَعَ اللّٰهُ عَلَيْهَا بِكُفْرِهِمْ فَلَا يُؤْمِنُوْنَ اِلَّا قَلِيْلًا ﴿۱۵۵﴾

अल्लाहका चिह्नहरूको अवज्ञा गरेको, तथा तिनीहरूले नबीहरूलाई अन्यायपूर्वक हत्या गर्न चाहेको, तथा तिनीहरूले "हाम्रो हृदय आवरणले आवृत छ," भनेकै कारण– होइन, अपितु तिनीहरूको अविश्वासका कारण अल्लाहले तिनीहरूलाई मोहर बन्द गरिदिएका छन्, त्यसकारण तिनीहरू कमैमात्रामा विश्वास गर्छन्–

وَّبِكُفْرِهِمْ وَقَوْلِهِمْ عَلٰى مَرْيَمَ بُهْتَانًا عَظِيْمًا ﴿۱۵۶﴾

१५७. तथा तिनीहरूको अविश्वासका कारण र मरियमकाविरुद्ध तिनीहरूले गम्भीर आरोप लगाएकै कारण,

وَّقَوْلِهِمْ اِنَّا قَتَلْنَا الْمَسِيْحَ عِيْسَى ابْنَ مَرْيَمَ رَسُوْلَ اللّٰهِ ۚ وَمَا قَتَلُوْهُ وَمَا صَلَبُوْهُ وَلٰكِنْ شُبِّهَ لَهُمْ ؕ وَاِنَّ الَّذِيْنَ اخْتَلَفُوْا فِيْهِ لَفِيْ شَكٍّ مِّنْهُ ؕ مَا لَهُمْ بِهٖ مِنْ عِلْمٍ اِلَّا اتِّبَاعَ الظَّنِّ ۚ وَمَا قَتَلُوْهُ يَقِيْنًا ﴿۱۵۷﴾

१५८. तथा तिनीहरूको "हामीले अल्लाहका सन्देशवाहक मरियमपुत्र ईसा मसीहको हत्या गऱ्यौं," भन्ने भनाइकै कारण, वस्तुतः न तिनीहरूले उनको हत्या गरे न त उनलाई शूली नै दिए*, परन्तु उनलाई तिनीहरूका दृष्टिमा (शूली दिएको व्यक्तिभैंâ) देखाइएको थियो, तथा जुन व्यक्तिहरू यस बारेमा मतभेद राख्छन् निश्चय नै तिनीहरू यस सम्बन्धमा सन्देहजनक (स्थितिमा) रहेका छन्; तिनीहरूलाई यसबारे (स्पष्ट) ज्ञान छैन, अतः केवल कपोल-कल्पित कुराहरूका पछि लाग्छन्; तथा त्यस (कल्पना)लाई तिनीहरूले वास्तविकतामा परिवर्तन गर्न सकेनन्**;

---

* अर्थात् न उनलाई शूलीमा चढाएर मारे ।

** टिप्पणी : यसमा ईसा (येशु) को हत्या गर्नमा तिनीहरू हरप्रकारले असफल भएको कुरोमाथि विशेष जोड दिइएको छ । उक्त आयतले प्रारम्भमा नै यहुदीहरूको तिनीहरू ईसाको हत्या गर्न सफल भए भन्ने अहङ्कार (पूर्ण दावी) तर्फ सङ्केत गरेको छ भन्ने कुरा पाठकवर्गलाई स्मरण गराइएकोछ । यहुदीहरूको दावीलाई पवित्र कुरानले दृढतापूर्वक अस्वीकार गर्छ । त्यसैकारण आयतको अन्तमा "जे भएको रहे तापनि तिनीहरू उनको हत्या गर्नमा भने निस्सन्देह असफल रहे भन्ने निर्णायक घोषणा रहेको छ ।" शूली दिने कार्यको अस्वीकार गरिएको होइन अपितु शूलीद्वारा मृत्यु भएको भन्ने कुराको मात्र अस्वीकार गरिएको हो भन्ने यसले सङ्केत दिन्छ ।

'वा ला किन् शुब्बिहा लहुम्' ( وَلٰكِنْ شُبِّهَ لَهُمْ ) अरबी रचनामा रहेको 'शुब्बिहा' ( شُبِّهَ ) शब्दको सावधानीपूर्वक अध्ययन गर्नु आवश्यक छ । पूर्व वर्णित रचनाको सन्दर्भले ईसालाई छाडी अन्य कसैतर्फ सङ्केत गर्ने अनुमति दिँदैन अथवा वैकल्पिकरूपमा साधारणतया, त्यही घटनालाई दर्शाउँछ । 'शुब्बिहा' ( شُبِّهَ ) शब्दमा सङ्केत गरिएको सर्वनामले पनि व्याकरणको विधिअनुरूप स्वयम् ईसा ( उनीप्रति अल्लाहको शान्ति होस्) (येशु क्राइष्ट)लाई नै दर्शाउँछ । यसको अर्थ ती उनी नै थिए जसलाई उनीहरूका दृष्टिमा अस्पष्ट र कुनै अर्कै व्यक्तिसदृश देखाइएको थियो । त्यसकारण जब ईसा (उनीप्रति अल्लाहको शान्ति होस्)लाई शूलीमा टाङ्गिएको थियो उनी कुनै अन्य व्यक्तिस्वरूप टाङ्गिएका थिए । शूलीमा टाङ्के अथवा त्यसबाट मृतसदृश देखिएको कुराको अस्वीकार कदापि होइन अपितु शूलीद्वारा मृत्यु भएको भन्ने कुराको अस्वीकार हो । जुन घटना वास्तवमा घटेको थियो त्यसलाई लिएर निश्चय नै ठूलो विश्रृङ्खला उत्पन्न भएको थियो । त्यसकारण उक्त आयतको रूपरेखा निरन्तर विश्रृङ्खल र शङ्कास्पद बन्दै गयो । अन्य सबै अनुमानित कुराहरूमा आधारित रहेको छ । यही नै अन्तिम निचोड हो ।

यदि 'शुब्बिहा' शब्दले उक्त घटना ठिक त्यसैप्रकार (घटेको थियो) भन्ने बुझाएमा त्यसले घटित घटनाका सम्बन्धमा दुई परस्पर विवादी समूहहरूको भिन्न भिन्न दावीहरूको सङ्केत दिन्छ । ती दुई समूहहरूमध्ये कुनै पनि आफ्नो दावीको युक्तियुक्तताप्रति विश्वस्त थिएनन् । उदाहरणस्वरूप ईसा (उनीप्रति अल्लाहको शान्ति होस्)को शूलीद्वारा मृत्यु र त्यसपछि पुनर्जीवित भएप्रतिको इसाईहरूको आस्था कुनै युक्तिसङ्गत तर्कमा आधारित थिएन अपितु केवल मनगढन्त थियो । त्यसैगरी ईसाको शूलीमाथिको मृत्युबारे यहुदीहरूको दावी पनि कम मनगढन्त ( अनुमानित) थिएन । त्यसोपरान्त ईसाको शरीरमाथि अधिकार पाउन तिनीहरूले पिलातोस ( पिलाट) सित गरेको निवेदन (पनि) । वास्तवमा उनको तथाकथित मृत्युको सम्पूर्ण उपकथाका सम्वन्धमा तिनीहरूले आफ्नो आशङ्का प्रकट गरिसकेका थिए तथा उनी बच्न सफल भएको खण्डमा मुर्दाबाट जीवित भएको भनी उनी जनसाधारणसमक्ष पुनः प्रकट हुनेछन् भनी तिनीहरूले पिलातोसलाई सतर्क गरेका थिए ।

(मती २७:६३-६४)

यही त्यो घटना हो जसतर्फ अध्ययनान्तर्गत रहेको उक्त आयतको अन्तिम भागले सङ्केत गर्छ । जब त्यसले 'वा इन्नाल्लाजीना' ( وَإِنَّ الَّذِيْنَ ) भनी वर्णन गर्छ । अर्थात् , निश्चय नै जसले यसबारे मतभेद गरेका थिए (अथवा उनीमाथि वास्तवमा के घटेको थियो भन्नेबारे) तिनीहरू स्वयम् सन्देहग्रस्त थिए । 'बल् रफ'ाहुल्लाहो इलाइहि' ( بَلْ رَّفَعَهُ اللّٰهُ إِلَيْهِ ) कट्टर मुस्लिमहरूको बहुसंख्यकले उक्त आयतको यस भागबाट 'बल' शब्दको भावार्थले शूली दिएको कार्यलाई दर्शाउँछ भन्ने अर्थ लिन्छन् अर्थात् उनलाई शूलीमाथि मर्न दिनुको सट्टा अल्लाहले उनलाई शरीरका साथै उठाएर आकाशको कुनै स्थानतर्फ उद्धार गरे । त्यसैगरी जुन अवस्थामा पहिला उनलाई शूलीमा मार्नेलागेको अवस्थामा उनको उद्धार गरिएको थियो त्यही शारीरिक अवस्थामा आकाशमण्डलको कुनै स्थानमा उनी जीवित रहेका हुनुपर्छ । यस व्याख्याले धेरै कठिन प्रश्नहरू सिर्जना गरेको छ, मुख्यतयाः (क) यदि ईसा ( उनीप्रति अल्लाहको शान्ति होस्)लाई शूली दिइएकै थिएन भने, के शूली दिइएको सम्पूर्ण इतिहास नै अस्वीकार्य रहेको छ तथा त्यो सबै उपाख्यान जसबाट यहुदीहरू, इसाईहरू तथा यसैगरी रोमनहरू पनि प्रभावित छन् केवल एउटा कल्पना र धोका हो त? (ख) ईसालाई शरीरका साथै आकाशमा उठाइएको थियो भन्ने दावी आयतको कुन अंशमा रहेको छ त? त्यहाँ त केवल अल्लाहले उनलाई स्वयम्तर्फ उत्थान गरेका थिए भन्ने कुराको मात्र उल्लेख छ ।

بَلْ رَّفَعَهُ اللّٰهُ اِلَيْهِ ۚ وَكَانَ اللّٰهُ عَزِيْزًا حَكِيْمًا ﴿١٥٩﴾

१५९. यसका विपरीत अल्लाहले उनलाई आफूतर्फ उत्थान गरे । तथा अल्लाह परम क्षमताशील, तत्त्वज्ञ छन् ।

وَاِنْ مِّنْ اَهْلِ الْكِتٰبِ اِلَّا لَيُؤْمِنَنَّ بِهٖ قَبْلَ مَوْتِهٖ ۚ وَيَوْمَ الْقِيٰمَةِ يَكُوْنُ عَلَيْهِمْ شَهِيْدًا ﴿١٦٠﴾

१६०. तथा पुस्तकप्राप्त व्यक्तिहरूमध्ये कुनै यस्तो व्यक्ति छैन परन्तु जसले आफ्नो मृत्युभन्दा अघि यस (कुरा)मा अवश्य विश्वास गर्नेछ; तथा पुनरुत्थानका दिन, उनले (ईसाले) तिनीहरूविरुद्ध साक्षी दिनेछन्*-

---

पहिलो प्रश्नानुसार कट्टरवादीहरूले एउटा यस्तो काल्पनिक नाट्यरचना गरेका छन् जसअनुसार शूली दिइएको सत्यताको चाहिँ अस्वीकार हुन सक्दैन परन्तु त्यसमा के दावी गरिएको छ भने, जुन व्यक्तिलाई शूली दिइएको थियो त्यो व्यक्ति ईसा नभएर कोही अर्कै व्यक्ति थियो जसलाई अल्लाहको आदेशानुसार केही फरिस्ताहरूले ईसासदृश रूप दिएका थिए । त्यसैकारण त्यो शूली दिइएको व्यक्तिको सनाख्ति सम्बन्धी शङ्काहरू र विभिन्न अनुमानहरू (उत्पन्न) हुन गए । वस्तुतः उक्त व्याख्याले त्यसलाई समाधान गर्नुको सट्टा झन समस्याहरू उत्पन्न गर्छ । त्यसोपरान्त, त्यो सम्पूर्ण कहानी नै पूर्णतया आधारहीन रहेको छ । त्यो विचित्र दावी जसले केवल काल्पनिक कथाहरूलाई बृद्धि गर्छ, त्यसको समर्थनमा कुनै शास्त्रीय प्रमाण अथवा पवित्र नबी (उहाँप्रति शान्ति होस्) का धर्मोपदेशहरू (हदीसहरू) मा आधारित कुनै प्रमाणहरू कहिल्यै प्रस्तुत गरिएको छैन । जहाँसम्म उक्त आयतको त्यो व्याख्याको सम्बन्ध छ त्यो ता मध्यकालीन विद्वानहरूप्रति उदयमान भएको थियो । अल्लाहका सन्देशवाहक (उनीप्रति शान्ति होस्) स्वयम् भने यस कुराबाट पूर्णतयाः बेखबर थिए । दोस्रो प्रश्नबारे भन्ने हो भने उक्त दावीको दुर्ब्बलता पवित्र कुरानको उक्तिबाटै स्पष्ट देखापर्छ । 'र'फा' ( رَفْعٌ ) शब्दको अर्थ 'उत्थान गरिएको' हो । जब जब अल्लाहले कुनै व्यक्तिको उत्थान गर्छन् त्यस उत्थानले सदा मानिसको दर्जालाई नै दर्शाउँछ त्यसको शरीरलाई कदापि दर्शाउँदैन । वस्तुतः उक्त अर्थबाहेक यस आयतलाई अन्य कुनै तरिकाले अनुवाद गर्नु सम्भव छैन अर्थात् आध्यात्मिक दर्जाको उत्थान ।

उक्त आयतले अल्लाहले ईसालाई आफूतर्फ उत्थान गरे भनी घोषणा गर्छ । अल्लाहले उनलाई आकाशमण्डलको कुन स्थानतर्फ उठाएर लगे भन्ने कुराको केही उल्लेख छैन, उनले उनलाई आफूतर्फ उठाए वस्तुतः जहाँ ईसा थिए उनी त्यहीँ उपस्थित थिए । आकाशमण्डल अथवा पृथ्वीमा अल्लाहको उपस्थिति नरहेको कुनै स्थान छैन । अतः जब कसैलाई उनीतर्फ उठाइयो भनिन्छ, तब शारीरिक हलचल (उत्थान) हुनु असम्भव र अविश्वसनीय कुरो हो । उक्त आयतको अहमदीय्या ज्ञानानुसार 'परस्पर विपरित' (भाव) को गुढार्थले ईसाको अभिशापित मृत्युबारे यहुदीहरूको दावीलाई दर्शाउँछ । अभिशापको विपरित भने निस्सन्देह अल्लाहको निकटता (प्राप्ति) नै हुनजान्छ ।

* टिप्पणी : उक्त आयत यसको प्रकृत भावार्थलाई लिएर विवादको विषय बन्दै आएको छ । सबै यहुदीहरूले विना भेदभाव एक न एकदिन ईसा (येशु क्राइष्ट) लाई विश्वास गर्नेछन् तथा अल्लाहका साँचा नबीस्वरूप उनलाई स्वीकार्नेछन् भन्ने सङ्केतका साथ उक्त आयातले शूली दिइएको समयको सम्बन्ध सुदूर भविष्यसित रहेको छ भन्ने बुझाउँछ भनी केही विद्वानहरू

فَبِظُلْمٍ مِّنَ الَّذِينَ هَادُوا حَرَّمْنَا عَلَيْهِمْ طَيِّبَٰتٍ أُحِلَّتْ لَهُمْ وَبِصَدِّهِمْ عَن سَبِيلِ ٱللَّهِ كَثِيرًا ﴿١٦١﴾

१६१. अतः यहुदीहरूको अत्याचारका कारण तथा धेरै (मानिसहरूलाई) अल्लाहका मार्गबाट रोकेकै कारण, जुन पवित्र वस्तुहरू तिनीहरूका निम्ति वैध थिए हामीले ती वस्तुहरू तिनीहरूप्रति अवैध ठहऱ्यायौं,

وَأَخْذِهِمُ ٱلرِّبَوٰا۟ وَقَدْ نُهُوا۟ عَنْهُ وَأَكْلِهِمْ أَمْوَٰلَ ٱلنَّاسِ بِٱلْبَٰطِلِ ۚ وَأَعْتَدْنَا لِلْكَٰفِرِينَ مِنْهُمْ عَذَابًا أَلِيمًا ﴿١٦٢﴾

१६२. तथा तिनीहरूले ब्याज लिने गरेकोले यद्यपि त्यो तिनीहरूप्रति निषिद्ध गरिएको थियो तथा तिनीहरूले मानिसहरूको सम्पत्ति अन्यायपूर्वक भक्षण गरेकै (कारण) । तथा हामीले तिनीहरूमध्ये

विश्वास राख्छन् । ईसाको जीवनकालमै त्यो चमत्कार हुनेछ भन्ने कुराको समेत उक्त आयतमा उल्लेख रहेको छ भनी तिनीहरू दावी गर्छन् । 'क़ब्ल मौतेहि' ( قَبْلَ مَوْتِهِ ) शब्दहरूबाट जसको अर्थ हो 'उनको मृत्युअघि नै' तिनीहरूले त्यो अनुमान लगाएका हुन् । यहुदीहरूले भने हालसम्म उनलाई स्वीकार गरेका छैनन्, त्यसैकारण यस्ता विद्वानहरू (को धारणा) अनुसार ईसा(उनीप्रति अल्लाहको शान्ति होस्) अहिलेसम्म जीवितै रहेका हुनुपर्छ । साधारणतया: अर्को दृष्टिकोण चाहिँ के रहेको छ भने 'उनको मृत्युअघि नै भन्ने उक्तिले ईसा ( उनीप्रति अल्लाहको शान्ति होस्) (येशु काइष्ट) का समयका हरेक यहुदीहरूको आस्था बुझाउँछ । यसप्रकार त्यसको अर्थ हुनेछ– 'हरेक यहुदीले उसको (आफ्नो) मृत्यु हुनुअघि नै ईसा (येशु काइष्ट) प्रति विश्वास गर्नेछ– यो पनि एउटा यस्तो दावी हो जुन केवल अल्लाहद्वारा प्रमाणित हुन सक्छ । दुर्भाग्यवश यी विचारधाराहरूलाई त्यही अनुरूप स्वीकार्ने मार्गमा धेरै समस्याहरू र कठिनाईहरू खडा हुन्छन् । हामी उक्त समस्याको एउटा पूर्णतया पृथक र नवीन समाधान पेश गर्छौं । उक्त अध्ययनान्तर्गत आयतको अनुवाद यसप्रकार हुनेछ "पुस्तकप्राप्त व्यक्तिहरूमध्ये कुनै (एउटा) यस्तो व्यक्ति छैन परन्तु त्यसले आफ्नो मृत्यु हुनुअघि नै अवश्य उनीप्रति विश्वास (स्थापना) गर्नेछ ।" बन्धनीभित्रको शब्द अर्थात् 'एउटा' को आयतमा लिखित उल्लेख छैन परन्तु त्यसको सङ्केत दिइएको छ । यदि त्यसको उल्लेख रहेको भए आयत निम्नानुसार हुने थियो ।

मोटा अक्षरहरूमा रहेको शब्द नै साङ्केतिक शब्द हो । हाम्रो सुझाउ के रहेको छ भने 'अहद' साङ्केतिक रूपमा रहनुको सट्टा 'फरीक' ( فَرِيق ) शब्दलाई हामीले साङ्केतिक शब्द मान्नु उचित हुन्छ । यसप्रकार अनुवाद बन्नेछ : "पुस्तकप्राप्त व्यक्तिहरूमध्येको कुनै सम्प्रदाय अथवा समूह यस्तो छैन परन्तु ईसा(उनीप्रति अल्लाहको शान्ति होस्)प्रति त्यसले उनको मृत्युअघि नै विश्वास (स्थापना) गर्नेछ ।" यसले के आवश्यक देखिन्छ भने ईसा(उनीप्रति अल्लाहको शान्ति होस्)ले अवश्य यहुदीहरूका हराएका वंशहरूले बसोबास गरेका ठाउँहरूतर्फ बसाइँ सरे होलान् तथा त्यसो गरेर उनले इजरायलका घरानाका सबै बाह्र समुदायसम्म आफ्नो सन्देशवहन गर्ने कर्तव्य पूरा गरे । उक्त दृष्टिकोणलाई ईसा (उनीप्रति अल्लाहको शान्ति होस्)( येशु काइष्ट)को एउटा भविष्यवाणीको सशक्त समर्थन पनि प्राप्त छ जसमा उनले के दावी गरेका छन् भने, 'उनले इजरायलका घरानाका हराएका भेडाहरूलाई खोज्न जानु छ ।' (मती १५:२४)

अविश्वासी व्यक्तिहरूका निम्ति पीडायक दण्ड तयार गरेकाछौं ।

لٰكِنِ الرّٰسِخُوْنَ فِي الْعِلْمِ مِنْهُمْ وَالْمُؤْمِنُوْنَ يُؤْمِنُوْنَ بِمَاۤ اُنْزِلَ اِلَيْكَ وَمَاۤ اُنْزِلَ مِنْ قَبْلِكَ وَالْمُقِيْمِيْنَ الصَّلٰوةَ وَالْمُؤْتُوْنَ الزَّكٰوةَ وَالْمُؤْمِنُوْنَ بِاللّٰهِ وَالْيَوْمِ الْاٰخِرِ ؕ اُولٰٓئِكَ سَنُؤْتِيْهِمْ اَجْرًا عَظِيْمًا ﴿١٦٣﴾

१६३. परन्तु तिनीहरूमध्ये ती व्यक्तिहरू जो पूर्णज्ञानको गहिराईमा छन्, तथा ती विश्वासीजनहरू जसले तिमीप्रति अवतीर्ण गरिएकोप्रति तथा जुन तिमीभन्दा अघि अवतीर्ण गरिएको थियो (त्यसप्रति) विश्वास गर्छन्, तथा (विशेषतया) ती व्यक्तिहरू जसले नमाज(को) अनुष्ठान गर्छन् तथा तिनीहरू जसले जगात तिर्ने गर्छन् तथा तिनीहरू जसले अल्लाहप्रति र अन्तिम दिनप्रति विश्वास गर्छन् । यस्ता व्यक्तिहरूलाई हामी अवश्य महान प्रतिदान प्रदान गर्नेछौं ।

اِنَّاۤ اَوْحَيْنَاۤ اِلَيْكَ كَمَاۤ اَوْحَيْنَاۤ اِلٰى نُوْحٍ وَّالنَّبِيّٖنَ مِنْۢ بَعْدِهٖ ۚ وَاَوْحَيْنَاۤ اِلٰۤى اِبْرٰهِيْمَ وَاِسْمٰعِيْلَ وَاِسْحٰقَ وَيَعْقُوْبَ وَالْاَسْبَاطِ وَعِيْسٰى وَاَيُّوْبَ وَيُوْنُسَ وَهٰرُوْنَ وَسُلَيْمٰنَ ۚ وَاٰتَيْنَا دَاوٗدَ زَبُوْرًا ﴿١٦٤﴾

१६४. निश्चय नै, तिमीप्रति हामीले त्यसरी नै आकाशवाणी अवतीर्ण गरेका छौं जसरी हामीले नूहप्रति तथा उनीपछिका नबीहरूप्रति आकाशवाणी अवतीर्ण गरेका थियौं; तथा हामीले इब्राहिमप्रति, तथा इस्माईलप्रति तथा इस्हाकप्रति र याकूबप्रति तथा (उनका) सन्तानप्रति र ईसाप्रति तथा अय्युब तथा यूनुस र हारुन तथा सुलेमानप्रति आकाशवाणी (अवतीर्ण) गऱ्यौं, तथा दाऊदलाई हामीले 'जबूर'* प्रदान गरेका थियौं ।

وَرُسُلًا قَدْ قَصَصْنٰهُمْ عَلَيْكَ مِنْ قَبْلُ وَرُسُلًا لَّمْ نَقْصُصْهُمْ عَلَيْكَ ؕ وَكَلَّمَ اللّٰهُ مُوْسٰى تَكْلِيْمًا ﴿١٦٥﴾

१६५. तथा (हामीले केही) यस्ता सन्देशवाहकहरू (पठायौं) जसका बारेमा हामीले पहिला नै तिम्रासामु उल्लेख गरेका छौं तथा (केही) यस्ता सन्देशवाहकहरू पठायौं जसका बारेमा हामीले तिम्रासामु उल्लेख गरेकाछैनौं- तथा अल्लाहले मूसासँग खासगरी वार्तालाप गरेका थिए**

---

* 'जबूर' (زَبُوْرًا) जसले भजन (धार्मिक गीत)तर्फ सङ्केत गर्छ ।

** टिप्पणी अरबी व्याकरण अनुसार जब कुनै शब्दको मूलधातुलाई दोहोऱ्याइन्छ जस्तै

رُسُلًا مُّبَشِّرِيْنَ وَ مُنْذِرِيْنَ لِئَلَّا يَكُوْنَ لِلنَّاسِ عَلَى اللّٰهِ حُجَّةٌۢ بَعْدَ الرُّسُلِ ۚ وَكَانَ اللّٰهُ عَزِيْزًا حَكِيْمًا ﴿١٦٦﴾

१६६. सन्देशवाहकहरू जसले शुभसन्देश वहन गर्छन् तथा सावधान गर्छन्, ताकि ती सन्देशवाहकहरूको (आगमन) पश्चात् अल्लाहकाविरुद्धमा मानिसहरूको कुनै उजुरी नरहोस् । तथा अल्लाह परम शक्तिशाली, सर्वज्ञानी छन् ।

لٰكِنِ اللّٰهُ يَشْهَدُ بِمَآ اَنْزَلَ اِلَيْكَ اَنْزَلَهٗ بِعِلْمِهٖ ۚ وَ الْمَلٰٓئِكَةُ يَشْهَدُوْنَ ۚ وَ كَفٰى بِاللّٰهِ شَهِيْدًا ﴿١٦٧﴾

१६७. परन्तु अल्लाह के तिमीप्रति - आकाशवाणी)द्वारा साक्षी दिन्छन् भने उनले जे अवतीर्ण गरेका छन् त्यसलाई उनले आफ्नो ज्ञानले (परिपूर्ण तुल्याई) अवतीर्ण गरेका हुन् भनी तथा फरिस्ताहरू (पनि) साक्षी दिन्छन्; तथा साक्षीस्वरूप अल्लाह नै पर्याप्त रहेका छन् ।

اِنَّ الَّذِيْنَ كَفَرُوْا وَصَدُّوْا عَنْ سَبِيْلِ اللّٰهِ قَدْ ضَلُّوْا ضَلٰلًا بَعِيْدًا ﴿١٦٨﴾

१६८. ती व्यक्तिहरू जो अविश्वासी छन् तथा (अन्य व्यक्तिहरूलाई पनि) अल्लाहका मार्गमा जानबाट रोक्छन्, तिनीहरू निश्चय नै सुदूर विपथगामी भएका छन् ।

اِنَّ الَّذِيْنَ كَفَرُوْا وَظَلَمُوْا لَمْ يَكُنِ اللّٰهُ لِيَغْفِرَ لَهُمْ وَلَا لِيَهْدِيَهُمْ طَرِيْقًا ﴿١٦٩﴾

१६९. निश्चय नै, ती व्यक्तिहरू जसले अविश्वास गरेका छन् तथा अन्यायपूर्ण कार्यहरू गरेका छन्, तिनीहरूलाई अल्लाहले न त क्षमादान गर्नेछन् न तिनीहरूलाई कुनै मार्ग प्रदर्शन गर्नेछन्-

اِلَّا طَرِيْقَ جَهَنَّمَ خٰلِدِيْنَ فِيْهَآ اَبَدًا ۚ وَكَانَ ذٰلِكَ عَلَى اللّٰهِ يَسِيْرًا ﴿١٧٠﴾

१७०. सिवाय नर्कको मार्ग, जसमा तिनीहरू दीर्घकालीन बसोबास गर्नेछन् । यो अल्लाहका निम्ति सरल रहेको छ ।

يٰٓاَيُّهَا النَّاسُ قَدْ جَآءَكُمُ الرَّسُوْلُ بِالْحَقِّ مِنْ رَّبِّكُمْ فَاٰمِنُوْا خَيْرًا لَّكُمْ ۚ وَ اِنْ تَكْفُرُوْا فَاِنَّ لِلّٰهِ مَا فِى السَّمٰوٰتِ وَ الْاَرْضِ ۚ وَ كَانَ اللّٰهُ عَلِيْمًا حَكِيْمًا ﴿١٧١﴾

१७१. हे मानिसहरू हो ! निश्चय नै तिमीहरूका प्रतिपालकका तर्फबाट सन्देशवाहक सत्यका साथ तिमीहरूसमक्ष आएका छन्, त्यसकारण तिमीहरू विश्वास स्थापना गर, (यसमा) तिमीहरूको कल्याण

---

( كَانَ )लाई उक्त आयतमा दोहोऱ्याइएको छ, कुनै कुरामाथि जोड दिने अथवा दोहोऱ्याउने वा उच्च गुण अथवा सन्देहात्मक कुरालाई स्पष्ट पार्ने अभिप्रायले त्यसो गरिन्छ । यी सबै भावार्थहरू एकैसाथ प्रयोग गर्न सकिन्छ ।

(हुनेछ) । परन्तु यदि तिमीहरूले अविश्वास गरेमा, निःस्सन्देह, आकाशमण्डल तथा पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरू अल्लाहकै हुन् । तथा अल्लाह सर्वज्ञ, तत्त्वज्ञ छन् ।

१७२. हे पुस्तकप्राप्त व्यक्ति हो ! तिमीहरू आफ्नो धर्मको सीमोल्लङ्घन गर्ने नगर, तथा अल्लाहका बारेमा सत्यबाहेक अन्य केही कुरा नगर । निःस्सन्देह, मरियमपुत्र ईसा (येशु) मसीह, अल्लाहका एकजना सन्देशवाहक थिए तथा उनको त्यस वाणीका (पूरक) थिए जुन उनले मरियमप्रति अवतीर्ण गरेका थिए, तथा उनका तर्फबाट एउटा करुणा(का प्रतिक) थिए । त्यसकारण अल्लाह तथा उनका सन्देशवाहकहरूप्रति विश्वास स्थापना गर, तथा "(तिनीहरू) तीन जना छन्" भनी भन्ने नगर । (यस कुरालाई) त्याग, (त्यसैमा) तिमीहरूको कल्याण (हुनेछ) । निश्चय नै केवल अल्लाह नै एक मात्र उपास्य हुन् । उनको कुनै पुत्र हुन सक्छ भन्ने कुरा उनको पवित्रताको पूर्ण विपरीत रहेको छ । आकाशमण्डल तथा पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरू उनकै हुन् । तथा संरक्षक स्वरूप अल्लाह नै पर्याप्त रहेका छन् ।

يَٰٓأَهْلَ ٱلْكِتَٰبِ لَا تَغْلُوا۟ فِى دِينِكُمْ وَلَا تَقُولُوا۟ عَلَى ٱللَّهِ إِلَّا ٱلْحَقَّ ۚ إِنَّمَا ٱلْمَسِيحُ عِيسَى ٱبْنُ مَرْيَمَ رَسُولُ ٱللَّهِ وَكَلِمَتُهُۥٓ أَلْقَىٰهَآ إِلَىٰ مَرْيَمَ وَرُوحٌ مِّنْهُ ۖ فَـَٔامِنُوا۟ بِٱللَّهِ وَرُسُلِهِۦ ۖ وَلَا تَقُولُوا۟ ثَلَٰثَةٌ ۚ ٱنتَهُوا۟ خَيْرًا لَّكُمْ ۚ إِنَّمَا ٱللَّهُ إِلَٰهٌ وَٰحِدٌ ۖ سُبْحَٰنَهُۥٓ أَن يَكُونَ لَهُۥ وَلَدٌ ۘ لَّهُۥ مَا فِى ٱلسَّمَٰوَٰتِ وَمَا فِى ٱلْأَرْضِ ۗ وَكَفَىٰ بِٱللَّهِ وَكِيلًا ﴿١٧١﴾

१७३. निश्चयनै, मसीह अल्लाहका सेवक हुनुलाई कदापि अपमानजनक ठान्दैनन् । न त (अल्लाहको) सान्निध्य प्राप्त फरिस्ताहरूले।तथा जसले उनको उपसना गर्नुलाई आफ्नो अपमान ठान्छन् तथा अहङ्कार गर्छन् उनले तिनीहरू सबैलाई आफूनिर एकत्रित गर्नेछन् ।

لَّن يَسْتَنكِفَ ٱلْمَسِيحُ أَن يَكُونَ عَبْدًا لِّلَّهِ وَلَا ٱلْمَلَٰٓئِكَةُ ٱلْمُقَرَّبُونَ ۚ وَمَن يَسْتَنكِفْ عَنْ عِبَادَتِهِۦ وَيَسْتَكْبِرْ فَسَيَحْشُرُهُمْ إِلَيْهِ جَمِيعًا ﴿١٧٢﴾

१७४. तत्पश्चात् उनले ती व्यक्तिहरूलाई जो विश्वास गर्थे, तथा पुण्यकार्य गर्ने गर्थे, तिनीहरूको पूर्णपारितोषिक प्रदान गर्नेछन् तथा तिनीहरूलाई आफ्नो समृद्ध (अनुग्रह)

فَأَمَّا ٱلَّذِينَ ءَامَنُوا۟ وَعَمِلُوا۟ ٱلصَّٰلِحَٰتِ فَيُوَفِّيهِمْ أُجُورَهُمْ وَيَزِيدُهُم مِّن فَضْلِهِۦ ۖ وَأَمَّا ٱلَّذِينَ ٱسْتَنكَفُوا۟ وَ

اسْتَكْبَرُوا فَيُعَذِّبُهُمْ عَذَابًا أَلِيمًا ۙ وَلَا يَجِدُونَ لَهُمْ مِنْ دُونِ اللَّهِ وَلِيًّا وَلَا نَصِيرًا ﴿١٧٣﴾

बाट अधिक प्रदान गर्नेछन्; परन्तु ती व्यक्तिहरू जसले अपमान र अहङ्कार गर्थे, उनले तिनीहरूलाई पीडादायक दण्ड दिनेछन् । तथा तिनीहरूले अल्लाहबाहेक आफ्ना निम्ति न त कुनै मित्र पाउनेछन् न सहयोग नै ।

يَا أَيُّهَا النَّاسُ قَدْ جَاءَكُمْ بُرْهَانٌ مِنْ رَبِّكُمْ وَأَنْزَلْنَا إِلَيْكُمْ نُورًا مُبِينًا ﴿١٧٤﴾

१७५. हे मानिसहरू हो ! तिमीहरूसमक्ष निःस्सन्देह तिमीहरूका प्रतिपालकका तर्फबाट स्पष्ट प्रमाणको आगमन भइसकेको छ, तथा हामीले तिमीहरूतर्फ एउटा उज्वल प्रकाश अवतीर्ण गरेका छौं ।

فَأَمَّا الَّذِينَ آمَنُوا بِاللَّهِ وَاعْتَصَمُوا بِهِ فَسَيُدْخِلُهُمْ فِي رَحْمَةٍ مِنْهُ وَفَضْلٍ وَيَهْدِيهِمْ إِلَيْهِ صِرَاطًا مُسْتَقِيمًا ﴿١٧٥﴾

१७६. अतः ती व्यक्तिहरू जसले अल्लाहप्रति विश्वास गर्छन् तथा उनलाई दृढतापूर्वक पक्रन्छन्, उनले तिनीहरूलाई आफ्नो अनुग्रह तथा कृपामा दाखिल गर्नेछन् तथा तिनीहरूलाई आफूतर्फ (आउने) एउटा सन्मार्ग प्रदर्शन गर्नेछन् ।

يَسْتَفْتُونَكَ قُلِ اللَّهُ يُفْتِيكُمْ فِي الْكَلَالَةِ ۚ إِنِ امْرُؤٌ هَلَكَ لَيْسَ لَهُ وَلَدٌ وَلَهُ أُخْتٌ فَلَهَا نِصْفُ مَا تَرَكَ ۚ وَهُوَ يَرِثُهَا إِنْ لَمْ يَكُنْ لَهَا وَلَدٌ ۚ فَإِنْ كَانَتَا اثْنَتَيْنِ فَلَهُمَا الثُّلُثَانِ مِمَّا تَرَكَ ۚ وَإِنْ كَانُوا إِخْوَةً رِجَالًا وَنِسَاءً فَلِلذَّكَرِ مِثْلُ حَظِّ الْأُنْثَيَيْنِ ۗ يُبَيِّنُ اللَّهُ لَكُمْ أَنْ تَضِلُّوا ۗ وَاللَّهُ بِكُلِّ شَيْءٍ عَلِيمٌ ﴿١٧٦﴾

१७७. तिनीहरू तिमीसँग मार्ग चिह्नको निम्ति निवदेन गर्छन् । तिमी भन, अल्लाहले तिमीहरूलाई 'कलाला' का सम्बन्धमा आफ्नो चिह्न प्रदान गर्छन्: यदि कुनै व्यक्तिको मृत्यु हुन्छ जसको सन्तान नभएको तर उसकी बहिनी भएको भएमा उसले छाडेको सम्पत्तिको आधा अंश त्यसलाई प्राप्त हुनेछ; तथा त्यो व्यक्ति त्यसको (बहिनीको) सन्तान नरहेको खण्डमा तिनको वारिस हुनेछ । परन्तु दुईवटी बहिनीहरू रहेमा, तिनीहरू त्यसले (भाइले) छाडेको (सम्पत्तिका) दुई तिहाईका भागीदार हुनेछन् । तथा यदि (ती वारिसहरू) दुई भाइ-बहिनी रहेमा– पुरुषहरू र महिलाहरू (दुबै)– एक पुरुषको अंश दुईवटी महिलाहरूको अंश बराबर हुनेछ । अल्लाह तिमीहरूका निम्ति (यो) व्याख्या गर्छन् ताकि तिमीहरू विपथगामी नबन । तथा अल्लाहलाई सम्पूर्ण कुरा राम्रो थाहा छ ।

سُوْرَةُ الْمَآئِدَةِ مَدَنِيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ مِائَةٌ وَّاِحْدٰى وَعِشْرُوْنَ اٰيَةً وَّسِتَّةَ عَشَرَ رُكُوْعًا

## अल्-मा'इदा
(हिजरतपछि अवतरित)

१. परम दयालु, परम कृपालु अल्लाहको नाममा ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

२. हे विश्वासीजन हो ! (आफ्नो प्रतिज्ञापालन गर्ने) गर । तिमीहरूसमक्ष घोषणा गरिएकाहरूबाहेक पशुहरूका (एक श्रेणी घरपालुवा) मध्ये चौपायाहरू तिमीहरूका निम्ति वैध ठहऱ्याइएको छ । परन्तु तिमीहरू जब तीर्थयात्री (हज)को अवस्थामा रहन्छौ तब शिकार गर्नुलाई वैध नठान; निश्चय नै अल्लाहले जे चाहन्छन् निर्देशन दिन्छन् ।

يٰۤاَيُّهَا الَّذِيْنَ اٰمَنُوْۤا اَوْفُوْا بِالْعُقُوْدِ ؕ اُحِلَّتْ لَكُمْ بَهِيْمَةُ الْاَنْعَامِ اِلَّا مَا يُتْلٰى عَلَيْكُمْ غَيْرَ مُحِلِّى الصَّيْدِ وَاَنْتُمْ حُرُمٌ ؕ اِنَّ اللّٰهَ يَحْكُمُ مَا يُرِيْدُ ②

३. हे विश्वासीजन हो ! अल्लाहद्वारा पवित्र घोषित गरिएका वस्तुहरूको* अनादर नगर । तथा न त पवित्र महिना, न बलिदानका निम्ति ल्याइएका पशुहरूको नै (अनादर गर) । न त (बलिदान गर्न भनी) गलामा माला (पहिऱ्याइएका पशुहरूको) न पवित्र घरतर्फ आफ्ना प्रतिपालकको करुणा र (उनको) प्रसन्नता प्राप्तिका निम्ति जाने यात्रुहरूको अनादर गर । तथा जब तिमीहरूले हजका वस्त्रहरू उताछौं (र पवित्रस्थलका सीमाहरू पार गर्छौ), तब तिमीहरूले शिकार गर्न सक्नेछौ । तथा

يٰۤاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا لَا تُحِلُّوْا شَعَآئِرَ اللّٰهِ وَلَا الشَّهْرَ الْحَرَامَ وَلَا الْهَدْيَ وَلَا الْقَلَآئِدَ وَلَآ آٰمِّيْنَ الْبَيْتَ الْحَرَامَ يَبْتَغُوْنَ فَضْلًا مِّنْ رَّبِّهِمْ وَرِضْوَانًا ؕ وَاِذَا حَلَلْتُمْ فَاصْطَادُوْا ؕ وَلَا يَجْرِمَنَّكُمْ شَنَاٰنُ قَوْمٍ اَنْ صَدُّوْكُمْ عَنِ الْمَسْجِدِ الْحَرَامِ اَنْ تَعْتَدُوْا ۘ وَتَعَاوَنُوْا عَلَى الْبِرِّ وَالتَّقْوٰى ۪ وَلَا تَعَاوَنُوْا عَلَى الْاِثْمِ وَالْعُدْوَانِ ۪ وَاتَّقُوا اللّٰهَ ؕ اِنَّ اللّٰهَ شَدِيْدُ الْعِقَابِ ③

---

* निर्धारित समयावधि, विशेष स्थानहरू अथवा जीवित प्राणीहरू सबै पवित्र घोषित गरिएका वस्तुहरूमा पर्छन् ।

तिमीहरूले शिकार गर्न सक्नेछौ । तथा तिमीहरूलाई पवित्र मस्जिदतर्फ जानबाट रोक्नेहरू- प्रतिको शत्रुताले तिमीहरूलाई अत्याचारप्रति प्रेरित नगरोस् । पुण्य तथा धर्मनिष्ठताका कार्यहरूमा एक अर्कालाई सहयोग गर्ने गर; परन्तु पाप तथा सिमोल्लङ्घनताका कार्यहरूमा एक-अर्कालाई सहयोग नगर । तथा अल्लाहप्रति डराऊ । निश्चय नै दण्ड दिनमा अल्लाह कठोर छन् ।

حُرِّمَتْ عَلَيْكُمُ الْمَيْتَةُ وَالدَّمُ وَلَحْمُ
الْخِنْزِيرِ وَمَا أُهِلَّ لِغَيْرِ اللَّهِ بِهِ وَ
الْمُنْخَنِقَةُ وَالْمَوْقُوذَةُ وَالْمُتَرَدِّيَةُ
وَالنَّطِيحَةُ وَمَا أَكَلَ السَّبُعُ إِلَّا مَا
ذَكَّيْتُمْ وَمَا ذُبِحَ عَلَى النُّصُبِ وَأَنْ
تَسْتَقْسِمُوا بِالْأَزْلَامِ ذَٰلِكُمْ فِسْقٌ
الْيَوْمَ يَئِسَ الَّذِينَ كَفَرُوا مِنْ دِينِكُمْ
فَلَا تَخْشَوْهُمْ وَاخْشَوْنِ الْيَوْمَ أَكْمَلْتُ
لَكُمْ دِينَكُمْ وَأَتْمَمْتُ عَلَيْكُمْ
نِعْمَتِي وَرَضِيتُ لَكُمُ الْإِسْلَامَ دِينًا
فَمَنِ اضْطُرَّ فِي مَخْمَصَةٍ غَيْرَ مُتَجَانِفٍ
لِإِثْمٍ فَإِنَّ اللَّهَ غَفُورٌ رَحِيمٌ ③

४. तिमीहरूका निम्ति त्यस्तो (जन्तुको मासु) निषिद्ध गरिएको छ जुन आफै मरेको छ । तथा रक्त र सुँगुरको मासु, तथा कुनै यस्तो जन्तु जसप्रति अल्लाहबाहेक अन्य कसैको नाम उच्चारण गरिएको होस्, तथा घाँटी निचोरेर मारिएको जन्तु, तथा पिटेर मारिएको जन्तु, तथा लडेर मरेको जन्तु;र सिङ लागेर मरेको जन्तु, तथा कुनै जङ्गली जनावरले खाएको जन्तुको (मासु, सिवाय त्यो जसलाई तिमीहरूले विधिवत् वध गर्छौ; तथा कुनै वेदीमा वध गरिएका (जन्तुको मासु) अवैध ठहऱ्याइएको छ) । तथा जुवाका तीर हानेर आफ्नो भाग्य जान्न खोज्नु (पनि अवैध ठहऱ्याइएको छ) । यो (एउटा) अवज्ञापूर्ण (कार्य) हो । आज ती व्यक्तिहरू जसले अविश्वास गर्छन्, तिमीहरूको धर्म(लाई हानि पुऱ्याउन) बाट हताश भएका छन् । त्यसकारण तिनीहरूसित नडराऊ, परन्तु मसित डराऊ । आज मैले तिमीहरूका निम्ति तिमीहरूको धर्मलाई पूर्णता प्रदान

गरेको छु तथा तिमीहरूप्रति आफ्नो अनुग्रह पूर्ण गरेको छु तथा तिमीहरूका निम्ति इस्लामलाई धर्मस्वरूप चुनेको छु । परन्तु त्यो व्यक्ति जो भोकका कारण बाध्य हुन्छ, परन्तु जानी जानी पापतर्फ आकर्षित छैन भने, निश्चय नै, अल्लाह परम क्षमाशील, परम दानशील छन् ।

يَسْـَٔلُوْنَكَ مَاذَآ اُحِلَّ لَهُمْ ؕ قُلْ اُحِلَّ لَكُمُ الطَّيِّبٰتُ ۙ وَ مَا عَلَّمْتُمْ مِّنَ الْجَوَارِحِ مُكَلِّبِيْنَ تُعَلِّمُوْنَهُنَّ مِمَّا عَلَّمَكُمُ اللّٰهُ ؗ فَكُلُوْا مِمَّاۤ اَمْسَكْنَ عَلَيْكُمْ وَاذْكُرُوا اسْمَ اللّٰهِ عَلَيْهِ ۪ وَاتَّقُوا اللّٰهَ ؕ اِنَّ اللّٰهَ سَرِيْعُ الْحِسَابِ ۝

५. तिनीहरू तिमीसँग तिनीहरूका निम्ति के (के कुरा) वैध गरिएको छ भनी सोध्छन् । तिमी भन, "सम्पूर्ण पवित्र (असल) वस्तुहरू तिमीहरूका निम्ति वैध ठहऱ्याइएका छन् । तथा शिकारी जनावरहरू र पक्षीहरूलाई जे तिमीहरूले सिकाएका छौ (तिमीहरूका निम्ति समाप्त), शिकार गर्नका निम्ति (तिनीहरूलाई) प्रशिक्षण दिएर तथा तिनीहरूलाई (त्यो) सिकाएर जुन अल्लाहले तिमीहरूलाई सिकाएका छन् । अत: जे तिनीहरूले तिमीहरूका निम्ति समात्छन् त्यसबाट खाउँ तथा त्यसप्रति अल्लाहको नाम उच्चारण गर । तथा अल्लाहप्रति डराऊ । अल्लाह निश्चय नै शीघ्र हिसाब लिने गर्छन् ।

اَلْيَوْمَ اُحِلَّ لَكُمُ الطَّيِّبٰتُ ؕ وَطَعَامُ الَّذِيْنَ اُوْتُوا الْكِتٰبَ حِلٌّ لَّكُمْ ۪ وَ طَعَامُكُمْ حِلٌّ لَّهُمْ ؗ وَالْمُحْصَنٰتُ مِنَ الْمُؤْمِنٰتِ وَ الْمُحْصَنٰتُ مِنَ الَّذِيْنَ اُوْتُوا الْكِتٰبَ مِنْ قَبْلِكُمْ اِذَاۤ اٰتَيْتُمُوْهُنَّ اُجُوْرَهُنَّ مُحْصِنِيْنَ غَيْرَ مُسٰفِحِيْنَ وَلَا مُتَّخِذِيْۤ اَخْدَانٍ ؕ وَمَنْ

६. आजका दिन सम्पूर्ण पवित्र वस्तुहरू तिमीहरूका निम्ति वैध गरिएका छन् । तथा पुस्तकप्राप्त व्यक्तिहरूको खाद्य तिमीहरूका निम्ति वैध रहेको छ । तथा तिमीहरूको खाद्य तिनीहरूका निम्ति वैध रहेको छ । तथा निष्कलङ्क, विश्वासी महिलाहरू तथा तिमीहरूभन्दा पहिला पुस्तक प्रदान गरिएकाहरूमध्ये (ती महिलाहरू वैध हुनेछन्) जब तिनीहरूलाई तिनीहरूको

يَّكْفُرْ بِالْاِيْمَانِ فَقَدْ حَبِطَ عَمَلُهٗ ؗ وَهُوَ فِي الْاٰخِرَةِ مِنَ الْخٰسِرِيْنَ ۝٥ ع

महर (दाइजो) वैधानिक विवाह गरी तथा न व्यभिचार गरी न त गुप्त प्रेमिकाहरू तुल्याई, दिन्छौ । तथा जसले आस्था विपरीत कार्य गर्छ, त्यसको कार्य अवश्य निष्फल रहन्छ, तथा परलोकमा त्यो व्यक्ति घाटा खाने व्यक्तिहरूमध्येको हुनेछ ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْٓا اِذَا قُمْتُمْ اِلَى الصَّلٰوةِ فَاغْسِلُوْا وُجُوْهَكُمْ وَاَيْدِيَكُمْ اِلَى الْمَرَافِقِ وَامْسَحُوْا بِرُءُوْسِكُمْ وَاَرْجُلَكُمْ اِلَى الْكَعْبَيْنِ ؕ وَاِنْ كُنْتُمْ جُنُبًا فَاطَّهَّرُوْا ؕ وَاِنْ كُنْتُمْ مَّرْضٰٓى اَوْ عَلٰى سَفَرٍ اَوْ جَآءَ اَحَدٌ مِّنْكُمْ مِّنَ الْغَآئِطِ اَوْ لٰمَسْتُمُ النِّسَآءَ فَلَمْ تَجِدُوْا مَآءً فَتَيَمَّمُوْا صَعِيْدًا طَيِّبًا فَامْسَحُوْا بِوُجُوْهِكُمْ وَاَيْدِيْكُمْ مِّنْهُ ؕ مَا يُرِيْدُ اللّٰهُ لِيَجْعَلَ عَلَيْكُمْ مِّنْ حَرَجٍ وَّلٰكِنْ يُّرِيْدُ لِيُطَهِّرَكُمْ وَلِيُتِمَّ نِعْمَتَهٗ عَلَيْكُمْ لَعَلَّكُمْ تَشْكُرُوْنَ ۝٦

७. हे विश्वासीजन हो ! जब तिमीहरू नमाजका (प्राथनाका) निम्ति खडा हुन्छौ तब आफ्ना मुख र हातहरू कुहिनासम्म धुने गर, तथा आफ्ना (चिसा) हातले आफ्नो टाउकोलाई पुछ्ने गर, तथा आफ्ना खुट्टा गोलीगाँठासम्म (धुने गर) । तथा यदि तिमीहरू अपवित्र रहेमा (नुहाएर) स्वयम्लाई पवित्र तुल्याऊ । तथा यदि तिमीहरू बिमारी भएमा वा (तिमीहरू) यात्रावस्थामा रहेमा, वा तिमीहरूमध्ये कोही शौचालयबाट आएको अथवा महिलासँग सहवास गरेर आएको भएमा र तिमीहरूलाई पानी प्राप्त नभएमा, तिमीहरू चोखो माटो लिएर त्यसद्वारा आफ्ना मुख र हात पुछ्ने गर । अल्लाहले तिमीहरूलाई कुनै अप्ठेरोमा पार्न चाहँदैनन्, परन्तु उनले तिमीहरूलाई पवित्र तुल्याउन र तिमीहरूप्रति आफ्नो अनुग्रह पूर्ण गर्न चाहन्छन्, ताकि तिमीहरू कृतज्ञ बन्न सक ।

وَاذْكُرُوْا نِعْمَةَ اللّٰهِ عَلَيْكُمْ وَمِيْثَاقَهُ الَّذِيْ وَاثَقَكُمْ بِهٖٓ ۙ اِذْ قُلْتُمْ سَمِعْنَا وَاَطَعْنَا ؗ وَاتَّقُوا اللّٰهَ ؕ اِنَّ اللّٰهَ عَلِيْمٌۢ بِذَاتِ الصُّدُوْرِ ۝٧

८. तथा अल्लाहले तिमीहरूप्रति गरेको अनुग्रह र उनले तिमीहरूबाट लिएको त्यस अङ्गीकारको स्मरण गर जब तिमीहरूले भनेका थियौ, "हामीले

सुन्यौं र हामी आज्ञाकारी भयौं" तथा अल्लाहप्रति डराऊ । निश्चय नै अल्लाह मनमा रहेका कुराहरूलाई राम्ररी जान्दछन् ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوا۟ كُونُوا۟ قَوَّٰمِينَ لِلَّهِ شُهَدَآءَ بِٱلْقِسْطِ ۖ وَلَا يَجْرِمَنَّكُمْ شَنَـَٔانُ قَوْمٍ عَلَىٰٓ أَلَّا تَعْدِلُوا۟ ۚ ٱعْدِلُوا۟ هُوَ أَقْرَبُ لِلتَّقْوَىٰ ۖ وَٱتَّقُوا۟ ٱللَّهَ ۚ إِنَّ ٱللَّهَ خَبِيرٌۢ بِمَا تَعْمَلُونَ ۝٩

९. हे विश्वासीजन हो ! तिमीहरू न्यायपूर्वक साक्षी दिँदै अल्लाहका मार्गमा स्थिर रहने गर; तथा कुनै जातिका (मानिसहरूको) शत्रुताले तिमीहरूलाई न्याय परित्याग गरी विपरित कार्यप्रति नउक्साओस् । (सदा) । न्यायकारी बन, त्यो सत्यनिष्ठताको निकटतम (कुरो) हो । तथा अल्लाहसित डराऊ । निश्चय नै तिमीहरू जे गर्छौ त्यसप्रति अल्लाह सचेत छन् ।

وَعَدَ ٱللَّهُ ٱلَّذِينَ ءَامَنُوا۟ وَعَمِلُوا۟ ٱلصَّٰلِحَٰتِ ۙ لَهُم مَّغْفِرَةٌ وَأَجْرٌ عَظِيمٌ ۝١٠

१०. जसले विश्वास गर्छन् तथा पुण्य कार्य गर्छन् अल्लाहले तिनीहरूसँग तिनका निम्ति क्षमादान तथा महान प्रतिदान रहेको छ भनी प्रतिवचन गरेका छन् ।

وَٱلَّذِينَ كَفَرُوا۟ وَكَذَّبُوا۟ بِـَٔايَٰتِنَآ أُو۟لَٰٓئِكَ أَصْحَٰبُ ٱلْجَحِيمِ ۝١١

११. तथा ती व्यक्तिहरू जसले अविश्वास गर्छन् तथा हाम्रा चिह्नहरू अस्वीकार गर्छन् तिनीहरू नर्कवासी व्यक्तिहरू हुन् ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوا۟ ٱذْكُرُوا۟ نِعْمَتَ ٱللَّهِ عَلَيْكُمْ إِذْ هَمَّ قَوْمٌ أَن يَبْسُطُوٓا۟ إِلَيْكُمْ أَيْدِيَهُمْ فَكَفَّ أَيْدِيَهُمْ عَنكُمْ ۖ وَٱتَّقُوا۟ ٱللَّهَ ۚ وَعَلَى ٱللَّهِ فَلْيَتَوَكَّلِ ٱلْمُؤْمِنُونَ ۝١٢

१२. हे विश्वासीजन हो ! तिमीहरूप्रति अल्लाहको त्यस अनुग्रहलाई स्मरण गर जब एउटा जातिले तिमीहरूमाथि हात हाल्न चाहेको थियो परन्तु उनले तिनका हात तिमीहरू(तर्फ आउन)बाट रोकिदिए । तथा अल्लाहसित डराऊ । तथा अल्लाहमाथि नै विश्वासीहरूले भरोसा राख्नुपर्छ ।

وَلَقَدْ أَخَذَ اللَّهُ مِيثَاقَ بَنِي إِسْرَائِيلَ وَبَعَثْنَا مِنْهُمُ اثْنَيْ عَشَرَ نَقِيبًا ۖ وَقَالَ اللَّهُ إِنِّي مَعَكُمْ ۖ لَئِنْ أَقَمْتُمُ الصَّلَاةَ وَآتَيْتُمُ الزَّكَاةَ وَآمَنْتُمْ بِرُسُلِي وَعَزَّرْتُمُوهُمْ وَأَقْرَضْتُمُ اللَّهَ قَرْضًا حَسَنًا لَأُكَفِّرَنَّ عَنْكُمْ سَيِّئَاتِكُمْ وَلَأُدْخِلَنَّكُمْ جَنَّاتٍ تَجْرِي مِنْ تَحْتِهَا الْأَنْهَارُ ۚ فَمَنْ كَفَرَ بَعْدَ ذَٰلِكَ مِنْكُمْ فَقَدْ ضَلَّ سَوَاءَ السَّبِيلِ ﴿١٢﴾

१२. तथा निश्चय नै अल्लाहले इजरायलका सन्तानबाट उउटा अङ्गीकार ग्रहण गरेका थिए; तथा हामीले तिनीहरूमध्येबाट बाह्रजना नायकहरू* खडा गरेका थियौं । तथा अल्लाहले भनेका थिए, "निश्चय नै, यदि तिमीहरूले नमाज अनुष्ठान गऱ्यौ र जगात तिऱ्यौ तथा मेरा सन्देशवाहकहरूप्रति विश्वास गऱ्यौ र तिनीहरूलाई सहयोग गऱ्यौ भने र अल्लाहलाई केही ऋण उत्तम ऋणस्वरूप दियौ भने म तिमीहरूसँग छु । म तिमीहरूबाट तिमीहरूका अवगुणहरू हटाउनेछु तथा तिमीहरूलाई त्यस्ता बगैंचाहरूमा प्रवेश गराउनेछु जसमनि नहरहरू बगिरहेछन् । परन्तु तिमीहरूमध्ये जुन व्यक्तिले त्यसपछि (पनि) अविश्वास गर्छ त्यो व्यक्ति अवश्य नै सन्मार्गबाट विपथगामी भयो ।"

فَبِمَا نَقْضِهِمْ مِيثَاقَهُمْ لَعَنَّاهُمْ وَجَعَلْنَا قُلُوبَهُمْ قَاسِيَةً ۖ يُحَرِّفُونَ الْكَلِمَ عَنْ مَوَاضِعِهِ ۙ وَنَسُوا حَظًّا مِمَّا ذُكِّرُوا بِهِ ۚ وَلَا تَزَالُ تَطَّلِعُ عَلَىٰ خَائِنَةٍ مِنْهُمْ إِلَّا قَلِيلًا مِنْهُمْ ۖ فَاعْفُ عَنْهُمْ وَاصْفَحْ ۚ إِنَّ اللَّهَ يُحِبُّ الْمُحْسِنِينَ ﴿١٣﴾

१४. अतः तिनीहरूले आफ्नो अङ्गीकार भङ्ग गरेका कारण, हामीले तिनीहरूलाई अभिश्रापित गऱ्यौं तथा हामीले तिनीहरूका हृदयलाई कठोर तुल्यायौं । तिनीहरू शब्दहरूलाई तिनका (वास्तविक) स्थानहरूबाट अदलबदल गर्छन् तथा जुन कुराको तिनीहरूलाई उपदेश दिइएको थियो त्यसको एउटा (उत्तम) अंश

* 'नकीब' शब्दको यथोचित अर्थ प्रकट गर्न सक्ने सम्भवतः कुनै एकल शब्द छैन । यसको अर्थ केवल 'एउटा नायक' (नेता) मात्र नभएर घोषणाकारी पनि बन्छ । एउटा यस्तो व्यक्ति जसलाई घोषणा पढेर सुनाउने अथवा सरकारको तर्फबाट अथवा अन्य उच्च पदाधिकारीहरूका तर्फबाट निर्णय सुनाउने अधिकार प्राप्त रहेको छ ।

बिर्सिसकेका छन् । तिनीहरूमध्ये केहीबाहेक तिमी तिनीहरूले गर्ने विश्वासघातप्रति विदित रहनेछैनौ । अतः तिनीहरूलाई माफ गर तथा सहनशीलता देखाउ । अल्लाहले निश्चय नै परोपकारी व्यक्तिहरूलाई मन पराउँछन् ।

وَمِنَ الَّذِينَ قَالُوا إِنَّا نَصَارَىٰ أَخَذْنَا مِيثَاقَهُمْ فَنَسُوا حَظًّا مِّمَّا ذُكِّرُوا بِهِ فَأَغْرَيْنَا بَيْنَهُمُ الْعَدَاوَةَ وَالْبَغْضَاءَ إِلَىٰ يَوْمِ الْقِيَامَةِ ۚ وَسَوْفَ يُنَبِّئُهُمُ اللَّهُ بِمَا كَانُوا يَصْنَعُونَ ﴿١٤﴾

१५. तथा हामीले ती व्यक्तिहरूबाट (पनि) जसले "हामी इसाई हौं" भन्छन् एउटा अङ्गीकार लिएका थियौं, परन्तु तिनीहरूले पनि जुन कुराको तिनीहरूलाई उपदेश दिइएको थियो त्यसको एउटा (उत्तम) अंश बिर्सिएका छन् । त्यसकारण हामीले तिनीहरूको भागमा पुनरुत्थानका दिनसम्मका निम्ति पारस्परिक शत्रुता र घृणाभाव उत्पन्न गरिदिएका छौं तथा जुन कार्य तिनीहरूले गर्दै आएका छन् त्यसप्रति अल्लाहले चाँडै नै तिनीहरूलाई अवगत गराउनेछन्

يَا أَهْلَ الْكِتَابِ قَدْ جَاءَكُمْ رَسُولُنَا يُبَيِّنُ لَكُمْ كَثِيرًا مِّمَّا كُنتُمْ تُخْفُونَ مِنَ الْكِتَابِ وَيَعْفُو عَن كَثِيرٍ ۚ قَدْ جَاءَكُم مِّنَ اللَّهِ نُورٌ وَكِتَابٌ مُّبِينٌ ﴿١٥﴾

१६. हे पुस्तकप्राप्त व्यक्ति हो ! हाम्रा सन्देशवाहक तिमीहरूसमक्ष आएका छन्, जसले तिमीहरूले पुस्तकबाट लुकाएर राखेका अधिकांश कुरा तिमीहरूसमक्ष प्रकट गर्छन् । तथा धेरै कुराहरूलाई छाडिदिन्छन् । तिमीहरू समक्ष अल्लाहका तर्फबाट एउटा ज्योति र एउटा स्पष्ट पुस्तकको आगमन भइसकेको छ ।

يَهْدِي بِهِ اللَّهُ مَنِ اتَّبَعَ رِضْوَانَهُ سُبُلَ السَّلَامِ وَيُخْرِجُهُم مِّنَ الظُّلُمَاتِ إِلَى النُّورِ بِإِذْنِهِ وَيَهْدِيهِمْ

१७. यसरी अल्लाहले उनको प्रसन्नताको कामना गर्ने व्यक्तिहरूलाई त्यसद्वारा शान्तिको मार्गतर्फ

اِلٰى صِرَاطٍ مُّسْتَقِيْمٍ ﴿١٦﴾

मार्गप्रदर्शन गर्छन् । तथा आफ्नो आदेशद्वारा तिनीहरूलाई सबै (प्रकारका) अन्धकारबाट निकाली प्रकाशतर्फ मार्गप्रदर्शन गर्छन्, तथा तिनीहरूलाई सन्मार्ग प्रदर्शन गर्छन् ।

لَقَدْ كَفَرَ الَّذِيْنَ قَالُوْٓا اِنَّ اللّٰهَ هُوَ الْمَسِيْحُ ابْنُ مَرْيَمَ ۗ قُلْ فَمَنْ يَّمْلِكُ مِنَ اللّٰهِ شَيْـًٔا اِنْ اَرَادَ اَنْ يُّهْلِكَ الْمَسِيْحَ ابْنَ مَرْيَمَ وَاُمَّهٗ وَمَنْ فِى الْاَرْضِ جَمِيْعًا ۗ وَلِلّٰهِ مُلْكُ السَّمٰوٰتِ وَالْاَرْضِ وَمَا بَيْنَهُمَا ۗ يَخْلُقُ مَا يَشَآءُ ۗ وَاللّٰهُ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ﴿١٧﴾

१८. ती व्यक्तिहरू निश्चय नै अविश्वासी भएका छन्, जसले भन्छन् "निश्चय नै अल्लाह नै मरियमपुत्र मसीह हुन् ।" तिमी भन, "यदि उनले मरियमपुत्र मसीह र उनकी माता तथा पृथ्वीमा भएका सबैलाई विनाश गर्न चाहेमा, अल्लाहविरुद्ध जाने शक्ति कसमा रहेको छ?" तथा आकाशमण्डल, पृथ्वी तथा यिनका बीचमा रहेका सबै वस्तुहरूमाथि अल्लाहकै राज्य (अधिकार) रहेको छ । उनले जे चाहन्छन् उत्पन्न गर्छन्, तथा हरेक कार्य गर्न अल्लाह पूर्ण सामर्थ्यवान छन् ।

وَقَالَتِ الْيَهُوْدُ وَالنَّصٰرٰى نَحْنُ اَبْنٰٓؤُا اللّٰهِ وَاَحِبَّآؤُهٗ ۗ قُلْ فَلِمَ يُعَذِّبُكُمْ بِذُنُوْبِكُمْ ۗ بَلْ اَنْتُمْ بَشَرٌ مِّمَّنْ خَلَقَ ۗ يَغْفِرُ لِمَنْ يَّشَآءُ وَيُعَذِّبُ مَنْ يَّشَآءُ ۗ وَلِلّٰهِ مُلْكُ السَّمٰوٰتِ وَالْاَرْضِ وَمَا بَيْنَهُمَا ۫ وَاِلَيْهِ الْمَصِيْرُ ﴿١٨﴾

१९. यहुदीहरू तथा इसाईहरू भन्ने गर्छन्, "हामी अल्लाहका पुत्र तथा उनका प्रियपात्र हौं ।" तिमी भन, "त्यसो भए किन तिमीहरूलाई तिमीहरूका पापका कारण उनले दण्ड दिन्छन् त? होइन, अपितु तिमीहरू केवल उनले सृष्टि गरेका मानिसहरूमध्ये हौ ।" उनले जसलाई चाहन्छन् क्षमा प्रदान गर्छन् तथा जसलाई चाहन्छन् दण्ड दिन्छन् । तथा आकाशमण्डल र पृथ्वी तथा यिनका बीचमा रहेका वस्तुहरूमाथि अल्लाहको राज्य (अधिकार) रहेको छ । तथा

उनीतर्फ नै फर्कनु छ ।

يَٰٓأَهْلَ ٱلْكِتَٰبِ قَدْ جَآءَكُمْ رَسُولُنَا يُبَيِّنُ لَكُمْ عَلَىٰ فَتْرَةٍ مِّنَ ٱلرُّسُلِ أَن تَقُولُوا۟ مَا جَآءَنَا مِنۢ بَشِيرٍ وَلَا نَذِيرٍ ۖ فَقَدْ جَآءَكُم بَشِيرٌ وَنَذِيرٌ ۗ وَٱللَّهُ عَلَىٰ كُلِّ شَىْءٍ قَدِيرٌ ﴿١٩﴾

२०. हे पुस्तकप्राप्त व्यक्ति हो ! सन्देशवाहकहरूको (श्रृङ्खलाको कम) भङ्गपछि तिमीहरूसमक्ष हाम्रा सन्देशवाहक आएका छन् जसले (सम्पूर्ण कुराहरूलाई) स्पष्ट पार्छन्, ताकि तिमीहरूले "हामीसमक्ष न कोही शुभसन्देशवाहक आयो न त कोही सावधानकर्ता नै" भनी भन्न नसक । अतः तिमीहरूसमक्ष अवश्य नै एकजना शुभसन्देशवाहक तथा सावधानकर्ता आएका छन् । तथा हरेक कार्य गर्न अल्लाह पूर्ण सामार्थ्यवान छन् ।

وَإِذْ قَالَ مُوسَىٰ لِقَوْمِهِۦ يَٰقَوْمِ ٱذْكُرُوا۟ نِعْمَةَ ٱللَّهِ عَلَيْكُمْ إِذْ جَعَلَ فِيكُمْ أَنۢبِيَآءَ وَجَعَلَكُم مُّلُوكًا وَءَاتَىٰكُم مَّا لَمْ يُؤْتِ أَحَدًا مِّنَ ٱلْعَٰلَمِينَ ﴿٢٠﴾

२१. तथा (स्मरण गर) जब मूसाले आफ्ना मानिसहरूसँग भनेका थिए– "हे मेरा मानिस हो, तिमीहरू अल्लाहले तिमीहरूप्रति गरेको अनुग्रहलाई सम्भ जब उनले तिमीहरूमध्ये नबी (सिद्ध) हरू नियुक्त गरेका थिए तथा तिमीहरूलाई राज्याधिपति तुल्याएका थिए, तथा उनले तिमीहरूलाई सम्पूर्ण पृथ्वीमा* अन्य कसैलाई प्रदान नगरेका कुरा प्रदान गरेका थिए ।

يَٰقَوْمِ ٱدْخُلُوا۟ ٱلْأَرْضَ ٱلْمُقَدَّسَةَ ٱلَّتِى كَتَبَ ٱللَّهُ لَكُمْ وَلَا تَرْتَدُّوا۟ عَلَىٰٓ أَدْبَارِكُمْ فَتَنقَلِبُوا۟ خَٰسِرِينَ ﴿٢١﴾

२२. "हे मेरा मानिसहरू हो, त्यस पवित्र भूमिमा प्रवेश गर जसलाई अल्लाहले तिमीहरूका निम्ति निर्दिष्ट गरेका छन् तथापछिल्तिर नफर्क, त्यसो गरेमा तिमीहरू घाटा खाएर फर्कनेछौ ।"

قَالُوا۟ يَٰمُوسَىٰٓ إِنَّ فِيهَا قَوْمًا

२३. तिनीहरूले भने "हे मूसा, त्यस

* (सम्पूर्ण पृथ्वी) भन्नाले त्यस समयका मानिसहरूलाई बुझाउँछ ।

جَبَّارِينَ وَإِنَّا لَن نَّدْخُلَهَا حَتَّىٰ يَخْرُجُوا مِنْهَا فَإِن يَخْرُجُوا مِنْهَا فَإِنَّا دَاخِلُونَ ﴿٢٢﴾

भूमिमा ज्यादै हठी तथा शक्तिशाली जाति रहेको छ, तथा जबसम्म तिनीहरू त्यहाँबाट निस्कने छैनन् हामी तबसम्म त्यहाँ प्रवेश गर्नेछैनौं । परन्तु यदि तिनीहरू त्यसबाट निस्किएर गए भने चाहिँ हामी (त्यहाँ) प्रवेश गर्नेछौं ।

قَالَ رَجُلَانِ مِنَ الَّذِينَ يَخَافُونَ أَنْعَمَ اللَّهُ عَلَيْهِمَا ادْخُلُوا عَلَيْهِمُ الْبَابَ فَإِذَا دَخَلْتُمُوهُ فَإِنَّكُمْ غَالِبُونَ وَعَلَى اللَّهِ فَتَوَكَّلُوا إِن كُنتُم مُّؤْمِنِينَ ﴿٢٣﴾

२४. तब (आफ्ना प्रतिपालकप्रति) डराउने व्यक्तिहरूमध्ये अल्लाहको अनुग्रह प्राप्त दुईजनाले भने, "तिनीहरूमाथि (आक्रमण गर्दै) ढोकामा प्रवेश गर; तिमीहरूले यसभा प्रवेश गरेपछि निश्चय नै तिमीहरू बिजयी हुनेछौ । तथा यदि तिमीहरू विश्वासी हौ भने, अल्लाहप्रति भरोसा राख ।"

قَالُوا يَا مُوسَىٰ إِنَّا لَن نَّدْخُلَهَا أَبَدًا مَّا دَامُوا فِيهَا فَاذْهَبْ أَنتَ وَرَبُّكَ فَقَاتِلَا إِنَّا هَاهُنَا قَاعِدُونَ ﴿٢٤﴾

२५. तिनीहरूले भने, "हे मूसा, जबसम्म तिनीहरू त्यहाँ छन्, हामी कदापी त्यहाँ प्रवेश गर्नेछैनौं । त्यसकारण तिमी र तिम्रा प्रतिपालक (त्यहाँ) गएर लड, हामी त यहीँ बसिरहनेछौं ।

قَالَ رَبِّ إِنِّي لَا أَمْلِكُ إِلَّا نَفْسِي وَأَخِي فَافْرُقْ بَيْنَنَا وَبَيْنَ الْقَوْمِ الْفَاسِقِينَ ﴿٢٥﴾

२६. उनले भने, "हे मेरा प्रतिपालक, आफ्नो ज्यान र आफ्नो भाइबाहेक अन्य कसैमाथि मेरो अधिकार छैन । त्यसकारण तिमी हामी र हाम्रा विद्रोही मानिसहरूकाबीच एउटा अन्तर उत्पन्न गरिदेऊ ।"

قَالَ فَإِنَّهَا مُحَرَّمَةٌ عَلَيْهِمْ أَرْبَعِينَ سَنَةً يَتِيهُونَ فِي الْأَرْضِ فَلَا تَأْسَ عَلَى الْقَوْمِ الْفَاسِقِينَ ﴿٢٦﴾

२७. (प्रतिपालकले) भने: "निश्चय नै, तिनीहरूलाई त्यसबाट चालिस वर्षसम्म वञ्चित राखिने छ । तिनीहरू विक्षिप्त (अलमल्ल) भई पृथ्वीमा घुम्नेछन् । अतः तिमी विद्रोही व्यक्तिहरूप्रति चिन्तित नहोऊ ।"

२८. तथा तिमी तिनीहरूलाई आदमका दुई पुत्रहरूको कथा सत्यतापूर्वक सुनाउ जब तिनीहरू दुबैले एउटा बलि चढाए अनि तिनीहरूमध्ये एउटाको बलि स्वीकृत भयो भने अर्काको चाँहि स्वीकृत भएन । अर्काले भन्यो, "म तिमीलाई अवश्य मार्नेछु ।" पहिलोले उत्तर दियो, "अल्लाहले केवल सत्यनिष्ठहरूबाट मात्र स्वीकार गर्ने गर्छन् ।

وَاتْلُ عَلَيْهِمْ نَبَأَ ابْنَيْ آدَمَ بِالْحَقِّ ۘ إِذْ
قَرَّبَا قُرْبَانًا فَتُقُبِّلَ مِنْ أَحَدِهِمَا
وَلَمْ يُتَقَبَّلْ مِنَ الْآخَرِ ۖ قَالَ
لَأَقْتُلَنَّكَ ۖ قَالَ إِنَّمَا يَتَقَبَّلُ اللَّهُ
مِنَ الْمُتَّقِينَ ﴿٢٧﴾

२९. "यदि तिमीले मलाई मार्नका निम्ति आफ्नो हात मतर्फ बढायौ भने, म तिमीलाई मार्नका निम्ति मेरा हात तिमीतर्फ कदापि बढाउनेछैन । म विश्व-ब्रह्माण्डका स्वामी अल्लाहसित डराउँछु

لَئِنْ بَسَطْتَ إِلَيَّ يَدَكَ لِتَقْتُلَنِي مَا
أَنَا بِبَاسِطٍ يَدِيَ إِلَيْكَ لِأَقْتُلَكَ ۖ
إِنِّي أَخَافُ اللَّهَ رَبَّ الْعَالَمِينَ ﴿٢٨﴾

३०. "मेरो के चाहना छ भने, तिमी मेरो पाप र आफ्नो पाप उठाऊ जसबाट तिमी अग्निबासीहरूमध्ये हुनेछौ, तथा गलत काम गर्नेहरूको यहीँ नै प्रतिदान हो ।"

إِنِّي أُرِيدُ أَنْ تَبُوءَ بِإِثْمِي وَإِثْمِكَ
فَتَكُونَ مِنْ أَصْحَابِ النَّارِ ۚ وَذَٰلِكَ
جَزَاءُ الظَّالِمِينَ ﴿٢٩﴾

३१. परन्तु उसको मनले उसलाई आफ्नो भाइको हत्याप्रति उक्साएरै छाड्यो, अतः उसले उसको हत्या गर्‍यो तथा उ नोक्सान खप्ने व्यक्तिहरूमध्येको हुनपुग्यो

فَطَوَّعَتْ لَهُ نَفْسُهُ قَتْلَ أَخِيهِ فَقَتَلَهُ
فَأَصْبَحَ مِنَ الْخَاسِرِينَ ﴿٣٠﴾

३२. तब अल्लाहले एउटा कागलाई (त्यहाँ) पठाए उसले (जमीनको) माटो खोस्रियो ताकि उसलाई आफ्नो भाइको लास कसरी लुकाउने भन्ने कुरा देखाओस् । उसले भन्यो, "मलाई

فَبَعَثَ اللَّهُ غُرَابًا يَبْحَثُ فِي الْأَرْضِ
لِيُرِيَهُ كَيْفَ يُوَارِي سَوْءَةَ أَخِيهِ ۚ
قَالَ يَا وَيْلَتَا أَعَجَزْتُ أَنْ أَكُونَ مِثْلَ

هٰذَا الْغُرَابِ فَأُوَارِيَ سَوْءَةَ أَخِيْ ۚ فَأَصْبَحَ مِنَ النّٰدِمِيْنَ ﴿٣١﴾

धिक्कार छ ! के म त्यो कागसरह पनि हुन सक्दिन ताकि म आफ्नो भाइको लासलाई पुर्न सकुँ?" तथा पुनः त्यो व्यक्ति पछुताउन पुग्यो ।

مِنْ أَجْلِ ذٰلِكَ ۚ كَتَبْنَا عَلٰى بَنِيْٓ إِسْرَآءِيْلَ أَنَّهٗ مَنْ قَتَلَ نَفْسًا بِغَيْرِ نَفْسٍ أَوْ فَسَادٍ فِي الْأَرْضِ فَكَأَنَّمَا قَتَلَ النَّاسَ جَمِيْعًا ۗ وَمَنْ أَحْيَاهَا فَكَأَنَّمَآ أَحْيَا النَّاسَ جَمِيْعًا ۗ وَلَقَدْ جَآءَتْهُمْ رُسُلُنَا بِالْبَيِّنٰتِ ۟ ثُمَّ إِنَّ كَثِيْرًا مِّنْهُمْ بَعْدَ ذٰلِكَ فِي الْأَرْضِ لَمُسْرِفُوْنَ ﴿٣٢﴾

३३. यसै कारण, हामीले इजरायलका सन्तानप्रति के नीति निर्धारण गऱ्यौं भने जसले कुनै व्यक्तिको हत्या गर्छ र त्यो (हत्या) कसैको (हत्याको) बदलास्वरूप वा देशमा दङ्गा-अशान्ति मच्चाएवापत् नभएमा त्यसले मानौं सम्पूर्ण मानवजातिको हत्या गऱ्यो; तथा जसले एउटा व्यक्तिलाई जीवनदान दिन्छ त्यसले मानौं सम्पूर्ण मानवजातिलाई नै जीवनदान दियो । तथा हाम्रा सन्देशवाहकहरू निश्चय नै तिनीहरू- समक्ष स्पष्ट चिह्नहरू लिएर आएका थिए तर त्यसपश्चात् पनि तिनीहरूमध्ये धेरैजसो व्यक्तिहरूले संसारमा सीमा नाघेर अन्यायपूर्ण (काम) गर्ने गरेका छन्

إِنَّمَا جَزٰٓؤُا الَّذِيْنَ يُحَارِبُوْنَ اللّٰهَ وَرَسُوْلَهٗ وَيَسْعَوْنَ فِي الْأَرْضِ فَسَادًا أَنْ يُّقَتَّلُوْٓا أَوْ يُصَلَّبُوْٓا أَوْ تُقَطَّعَ أَيْدِيْهِمْ وَأَرْجُلُهُمْ مِّنْ خِلَافٍ أَوْ يُنْفَوْا مِنَ الْأَرْضِ ۚ ذٰلِكَ لَهُمْ خِزْيٌ فِي الدُّنْيَا وَلَهُمْ فِي الْاٰخِرَةِ عَذَابٌ عَظِيْمٌ ﴿٣٣﴾

३४. जुन व्यक्तिहरू अल्लाह र उनका सन्देशवाहकविरुद्ध लडाइँ मोल्छन् तथा संसारमा अशान्ति फैलाउने प्रचेष्टा गर्छन् तिनीहरूको हत्या गरिनु वा तिनीहरूलाई शूली दिइनु अथवा तिनीहरूका हात र खुट्टाहरू उल्टा दिशामा काटिइनु अथवा तिनीहरूलाई देश निकाला गरिनु नै तिनीहरूको (एक मात्र) प्रतिदान रहेको छ । यस संसारमा तिनीहरूका निम्ति त्यो एउटा लाञ्छना हुनेछ भने, परलोकमा पनि तिनीहरूका निम्ति एउटा ठूलो दण्ड रहेको छ;

إِلَّا الَّذِينَ تَابُوا مِنْ قَبْلِ أَنْ تَقْدِرُوا عَلَيْهِمْ ۖ فَاعْلَمُوا أَنَّ اللَّهَ غَفُورٌ رَّحِيمٌ ﴿٣٤﴾

३५. सिवाय ती व्यक्तिहरू जसले आफुमाथि तिमीहरूको प्रतिपालकत्व हुनुअघि नै प्रायश्चित् गर्छन् । अत: अल्लाह परम क्षमाशील परम दानशील छन् भनी जान ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا اتَّقُوا اللَّهَ وَابْتَغُوا إِلَيْهِ الْوَسِيلَةَ وَجَاهِدُوا فِي سَبِيلِهِ لَعَلَّكُمْ تُفْلِحُونَ ﴿٣٥﴾

३६. हे विश्वासीजन हो ! अल्लाहसित डराऊ तथा उनको निकटता प्राप्तिको मार्ग खोज र उनका मार्गमा संघर्ष गर- ताकि तिमीहरू कृतकार्य हुन सक ।

إِنَّ الَّذِينَ كَفَرُوا لَوْ أَنَّ لَهُمْ مَا فِي الْأَرْضِ جَمِيعًا وَمِثْلَهُ مَعَهُ لِيَفْتَدُوا بِهِ مِنْ عَذَابِ يَوْمِ الْقِيَامَةِ مَا تُقُبِّلَ مِنْهُمْ ۖ وَلَهُمْ عَذَابٌ أَلِيمٌ ﴿٣٦﴾

३७. निश्चय नै ती व्यक्तिहरू जसले अविश्वास गर्छन् यदि तिनीहरूलाई त्यो सबै प्राप्त भए जो संसारमा रहेको छ,र त्यसमाथि थप त्यति नै, ताकि पुनरुत्थानका दिनको दण्डबाट त्यसद्वारा आफुलाई बचाउंन (त्यो सबै कुरा हर्जानाको रूपमा दिइन्थ्यो) भने पनि तिनीहरूबाट त्यो स्वीकार गरिने थिएन । तथा तिनीहरूले एउटा पीडादायक दण्ड पाउने छन् ।

يُرِيدُونَ أَنْ يَخْرُجُوا مِنَ النَّارِ وَمَا هُمْ بِخَارِجِينَ مِنْهَا ۖ وَلَهُمْ عَذَابٌ مُقِيمٌ ﴿٣٧﴾

३८. तिनीहरू अग्निबाट बाहिर निस्कन चाहने छन्, परन्तु तिनीहरू त्यसबाट बाहिर निस्कन सक्षम हुनेछैनन्, तथा तिनीहरूका निम्ति एउटा चिरस्थायी दण्ड रहेको छ ।

وَالسَّارِقُ وَالسَّارِقَةُ فَاقْطَعُوا أَيْدِيَهُمَا جَزَاءً بِمَا كَسَبَا نَكَالًا مِنَ اللَّهِ ۗ وَاللَّهُ عَزِيزٌ حَكِيمٌ ﴿٣٨﴾

३९. तथा चोरी गर्ने पुरुष र चोरी गर्ने महिला दुबैका हात तिनीहरूले गरेको अपराधका बदलामा काट, यो अल्लाहका तर्फबाट उदाहरणीय दण्डस्वरूप हो । तथा अल्लाह परम पराकमी, तत्त्वज्ञ छन्

فَمَنْ تَابَ مِنْ بَعْدِ ظُلْمِهِ وَأَصْلَحَ فَإِنَّ اللَّهَ يَتُوبُ عَلَيْهِ ۗ إِنَّ اللَّهَ غَفُورٌ رَحِيمٌ ﴿٤٠﴾

४०. परन्तु जसले आफ्नो सीमोल्लङ्घतापछि प्रायश्चित् गर्छ र आफ्नो सुधार गर्छ, तब निश्चय नै त्यसप्रति अल्लाहले कृपादृष्टि गर्नेछन्; अवश्य नै, अल्लाह परम क्षमाशील, परम दानशील छन् ।

أَلَمْ تَعْلَمْ أَنَّ اللَّهَ لَهُ مُلْكُ السَّمَاوَاتِ وَالْأَرْضِ يُعَذِّبُ مَنْ يَشَاءُ وَيَغْفِرُ لِمَنْ يَشَاءُ ۗ وَاللَّهُ عَلَىٰ كُلِّ شَيْءٍ قَدِيرٌ ﴿٤١﴾

४१. के तिमीलाई अल्लाह उनै हुन् जसको (अधीनमा) आकाशमण्डल र पृथ्वीको राज्य रहेको छ भन्ने ज्ञात छैन र ? उनी जसलाई चाहन्छन् दण्ड दिन्छन् र जसलाई चाहन्छन् क्षमा प्रदान गर्छन्; तथा हरेक कार्यहरूप्रति अल्लाह पूर्ण सामर्थ्यवान छन् ।

يَا أَيُّهَا الرَّسُولُ لَا يَحْزُنْكَ الَّذِينَ يُسَارِعُونَ فِي الْكُفْرِ مِنَ الَّذِينَ قَالُوا آمَنَّا بِأَفْوَاهِهِمْ وَلَمْ تُؤْمِنْ قُلُوبُهُمْ ۛ وَمِنَ الَّذِينَ هَادُوا ۛ سَمَّاعُونَ لِلْكَذِبِ سَمَّاعُونَ لِقَوْمٍ آخَرِينَ لَمْ يَأْتُوكَ ۖ يُحَرِّفُونَ الْكَلِمَ مِنْ بَعْدِ مَوَاضِعِهِ ۖ يَقُولُونَ إِنْ أُوتِيتُمْ هَٰذَا فَخُذُوهُ وَإِنْ لَمْ تُؤْتَوْهُ فَاحْذَرُوا ۚ وَمَنْ يُرِدِ اللَّهُ فِتْنَتَهُ فَلَنْ تَمْلِكَ لَهُ مِنَ اللَّهِ شَيْئًا ۚ أُولَٰئِكَ الَّذِينَ لَمْ يُرِدِ اللَّهُ أَنْ يُطَهِّرَ قُلُوبَهُمْ ۚ لَهُمْ فِي الدُّنْيَا خِزْيٌ ۖ وَلَهُمْ فِي الْآخِرَةِ عَذَابٌ عَظِيمٌ ﴿٤٢﴾

४२. हे सन्देशवाहक ! जुन व्यक्तिहरू आफ्ना मुखले त "हामी विश्वास गर्छौं" भन्ने गर्छन्, परन्तु तिनीहरूका हृदयले विश्वास गर्दैनन् तथा तिनीहरू चाँडो-चाँडो अविश्वासप्रति हाम फाल्न पुग्छन् । तिमीलाई तिनीहरूले चिन्तित नतुल्याउन । तथा यहुदीहरूमध्ये (पनि) केही यस्ता व्यक्तिहरू छन् जो मिथ्या कुराहरू सुन्न अत्यन्त अधीर रहन्छन् । तिनीहरू (ती कुराहरू) अन्य यस्ता मानिसहरू (समक्ष पुऱ्याउन) का निम्ति सुन्ने गर्छन् जुन मानिसहरू तिमीसमक्ष आएका छैनन् । तिनीहरू शब्दहरूलाई तिनका (वास्तविक र सही ढंगले) राखिएका स्थानबाट फेरबदल गर्ने गर्छन् र भन्छन् "यदि तिमीहरूलाई यो कुरा प्रदान गरियो भने त्यसलाई स्वीकार गर, परन्तु यदि तिमीहरूलाई त्यो कुरा प्रदान गरिएन भने, तिमीहरू सावधान होऊ !" तथा अल्लाहले

जसलाई जाँच्ने इच्छा गर्छन् तिमीले त्यसका निम्ति अल्लाहकाविरुद्धमा केही सामर्थ्य राख्नेछैनौ । यिनीहरू नै ती व्यक्तिहरू हुन् जसका हृदयलाई अल्लाहले पवित्र तुल्याउन चाहेनन्" तिनीहरूका निम्ति यस पृथ्वीमा अपमान रहेको छ तथा परलोकमा तिनीहरूका निम्ति भयङ्कर दण्ड रहेको छ ।

सَمّٰعُوْنَ لِلْكَذِبِ اَكّٰلُوْنَ لِلسُّحْتِ ۭ فَاِنْ جَاۗءُوْكَ فَاحْكُمْ بَيْنَهُمْ اَوْ اَعْرِضْ عَنْهُمْ ۚ وَاِنْ تُعْرِضْ عَنْهُمْ فَلَنْ يَّضُرُّوْكَ شَيْـًٔا ۭ وَاِنْ حَكَمْتَ فَاحْكُمْ بَيْنَهُمْ بِالْقِسْطِ ۭ اِنَّ اللّٰهَ يُحِبُّ الْمُقْسِطِيْنَ ۝٤٢

४३. तिनीहरू मिथ्या कुरा सुन्ने, (र) निषिद्ध वस्तुहरू खाने व्यक्तिहरू हुन् । त्यसकारण यदि तिनीहरू तिमीसमक्ष (न्यायका निम्ति) आए भने, चाहे तिमी तिनीहरूमध्ये निर्णय गर अथवा उनीहरूबाट अलग होऊ । तथा यदि तिमी तिनीहरूबाट अलगग भयौ भने तिनीहरूले तिम्रो केही बिगार्न सक्नेछैनन् । तथा यदि तिमी निर्णय गर्छौ भने तिनीहरू बीच न्यायपूर्वक निर्णय गर । निश्चय नै अल्लाहले ती व्यक्तिहरूलाई मन पराउँछन् जो न्यायी छन् ।

وَكَيْفَ يُحَكِّمُوْنَكَ وَعِنْدَهُمُ التَّوْرٰىةُ فِيْهَا حُكْمُ اللّٰهِ ثُمَّ يَتَوَلَّوْنَ مِنْۢ بَعْدِ ذٰلِكَ ۭ وَمَآ اُولٰۗىِٕكَ بِالْمُؤْمِنِيْنَ ۝٤٣ ع

४४. तथा तिनीहरूले कसरी तिमीलाई (आफ्नो) निर्णायक बनाउन सक्छन् र? जब तिनीहरूसित अल्लाहको तौरात छ जसमा अल्लाहको निर्णय छ? त्यसोपरान्त पनि तिनीहरू आफ्नो पिठ्यूँ मोड्छन्: तथा तिनीहरूले कदापि विश्वास स्थापना गर्नेछैनन् ।

اِنَّآ اَنْزَلْنَا التَّوْرٰىةَ فِيْهَا هُدًى وَّنُوْرٌ ۚ يَحْكُمُ بِهَا النَّبِيُّوْنَ الَّذِيْنَ

४५. निश्चय नै, हामीले तौरात अवतीर्ण गरेका थियौं जसमा मार्गदर्शन र ज्योति थियो त्यसद्वारा ती नबीहरू

اَسْلَمُوْا لِلَّذِيْنَ هَادُوْا وَالرَّبّٰنِيُّوْنَ وَ
الْاَحْبَارُ بِمَا اسْتُحْفِظُوْا مِنْ كِتٰبِ اللّٰهِ
وَ كَانُوْا عَلَيْهِ شُهَدَآءَ ۚ فَلَا تَخْشَوُا
النَّاسَ وَاخْشَوْنِ وَلَا تَشْتَرُوْا بِاٰيٰتِيْ
ثَمَنًا قَلِيْلًا ۚ وَمَنْ لَّمْ يَحْكُمْ بِمَآ اَنْزَلَ اللّٰهُ
فَاُولٰٓئِكَ هُمُ الْكٰفِرُوْنَ ﴿٤٤﴾

जो (हाम्रा) आज्ञाकारी थिए, यसैप्रकार ब्रह्मज्ञानी व्यक्तिहरू तथा विधानज्ञ व्यक्तिहरू यहुदीहरूका निम्ति निर्णय गर्ने गर्थे– कारण तिनीहरूबाट अल्लाहको पुस्तकको सुरक्षा मागिएको थियो तथा (किनभने) तिनीहरू त्यसका सुरक्षक थिए । त्यसकारण तिमीहरू मानिसहरूसँग नडराऊ परन्तु मसित डराऊ, तथा मेरा चिह्नहरूका सट्टामा निकृष्ट मूल्य ग्रहण नगर । तथा जसले अल्लाहले अवतीर्ण गरेका कुरा अनुसार निर्णय गर्ने गर्दैनन् तिनीहरू नै वास्तवमा अविश्वासी हुन् ।

وَ كَتَبْنَا عَلَيْهِمْ فِيْهَآ اَنَّ النَّفْسَ
بِالنَّفْسِ ۙ وَ الْعَيْنَ بِالْعَيْنِ وَ الْاَنْفَ
بِالْاَنْفِ وَ الْاُذُنَ بِالْاُذُنِ وَ السِّنَّ
بِالسِّنِّ ۙ وَ الْجُرُوْحَ قِصَاصٌ ؕ فَمَنْ
تَصَدَّقَ بِهٖ فَهُوَ كَفَّارَةٌ لَّهٗ ؕ وَمَنْ لَّمْ
يَحْكُمْ بِمَآ اَنْزَلَ اللّٰهُ فَاُولٰٓئِكَ هُمُ
الظّٰلِمُوْنَ ﴿٤٥﴾

४६. तथा हामीले त्यसमा तिनीहरूका निम्ति ज्यानका बदलामा ज्यान, र आँखाका बदलामा आँखा तथा नाकका बदलामा नाक, र कानका बदलामा कान, तथा दाँतका बदलामा दाँत तथा अन्य चोटहरूमा बराबरको बदला लिने नीति निर्धारण गरेका थियौं । तथा जसले त्यस अधिकारलाई मिनाहा गर्छ त्यसका निम्ति त्यो कार्य (पापको) प्रायश्चित स्वरूप हुनेछ; तथा जसले अल्लाहले अवतीर्ण गरेका कुरा अनुसार निर्णय गर्दैनन् तिनीहरू नै वास्तवमा अन्यायकारी हुन् ।

وَ قَفَّيْنَا عَلٰٓى اٰثَارِهِمْ بِعِيْسَى ابْنِ
مَرْيَمَ مُصَدِّقًا لِّمَا بَيْنَ يَدَيْهِ
مِنَ التَّوْرٰىةِ ۪ وَاٰتَيْنٰهُ الْاِنْجِيْلَ فِيْهِ
هُدًى وَّ نُوْرٌ ۙ وَّ مُصَدِّقًا لِّمَا بَيْنَ
يَدَيْهِ مِنَ التَّوْرٰىةِ وَ هُدًى وَّ
مَوْعِظَةً لِّلْمُتَّقِيْنَ ﴿٤٦﴾

४७. तथा हामीले मरियमपुत्र इसालाई तिनीहरूका पदचिह्नको अनुसरण गर्नका निम्ति पठायौं, जसले आफुभन्दा अघि तौरातमा (अवतीर्ण भएका) कुरालाई सत्य साबित गर्थे; तथा हामीले उनलाई इन्जिल (धर्मोपदेश) प्रदान गरेका थियौं जुन मार्गदर्शन र दिव्यज्योतिले परिपूर्ण थियो । त्यसले

त्यस कुरालाई सत्यसाबित गर्थ्यो जुन (कुरा) त्यसअघि तौरातमा (अवतीर्ण भएको) थियो, तथा त्यो अल्लाहसित डराऊने व्यक्तिहरूका निम्ति मार्गदर्शन तथा उपदेशस्वरूप थियो ।

وَلْيَحْكُمْ أَهْلُ الْإِنْجِيلِ بِمَا أَنْزَلَ اللَّهُ
فِيهِ ۚ وَمَنْ لَمْ يَحْكُمْ بِمَا أَنْزَلَ اللَّهُ
فَأُولَٰئِكَ هُمُ الْفَاسِقُونَ ﴿٤٧﴾

४८. तथा धर्मोपदेश (इन्जिल) प्राप्त व्यक्तिहरूले अल्लाहले जुन कुरा त्यसमा अवतीर्ण गरेका छन् त्यसअनुसार निर्णय गर्ने गरुन्, तथा जसले अल्लाहले अवतीर्ण गरे अनुसार निर्णय गर्दैनन्, तिनीहरू नै विद्रोही हुन् ।

وَأَنْزَلْنَا إِلَيْكَ الْكِتَابَ بِالْحَقِّ
مُصَدِّقًا لِمَا بَيْنَ يَدَيْهِ مِنَ
الْكِتَابِ وَمُهَيْمِنًا عَلَيْهِ ۖ فَاحْكُمْ
بَيْنَهُمْ بِمَا أَنْزَلَ اللَّهُ ۖ وَلَا تَتَّبِعْ
أَهْوَاءَهُمْ عَمَّا جَاءَكَ مِنَ الْحَقِّ ۚ
لِكُلٍّ جَعَلْنَا مِنْكُمْ شِرْعَةً وَ
مِنْهَاجًا ۚ وَلَوْ شَاءَ اللَّهُ لَجَعَلَكُمْ
أُمَّةً وَاحِدَةً وَلَٰكِنْ لِيَبْلُوَكُمْ فِي
مَا آتَاكُمْ فَاسْتَبِقُوا الْخَيْرَاتِ ۚ إِلَى اللَّهِ
مَرْجِعُكُمْ جَمِيعًا فَيُنَبِّئُكُمْ بِمَا كُنْتُمْ
فِيهِ تَخْتَلِفُونَ ﴿٤٨﴾

४९. तथा हामीले तिमीप्रति सत्यमा आधारित पुस्तक अवतीर्ण गरेका छौं जसले त्यस कुरालाई सत्य साबित गर्छ जुन कुरा त्यसअघिका पुस्तकमा अवतीर्ण गरिएको) थियो तथा यो त्यसको संरक्षक स्वरूप रहेको छ । त्यसकारण जुन कुरा अल्लाहले अवतीर्ण गरेका छन् त्यसद्वारा तिनीहरू बीच निर्णय गर, तथा तिमीसमक्ष आएको सत्यलाई (छाडी) तिनीहरूका निकृष्ट मनोवाञ्छाको अनुसरण नगर । तिमीहरूमध्ये प्रत्येकका निम्ति हामीले (व्यावहारिक मामिलामा) एउटा स्पष्ट आध्यात्मिक कानून तथा स्पष्ट मार्ग निर्धारण गरेका छौं । तथा यदि अल्लाहले आफ्नो इच्छा (मनाउन बाध्य) गरेका भए उनले तिमीहरू (सबै) लाई एउटै जनसमूह बनाउने थिए, परन्तु जुन कुरो उनले तिमीहरूलाई प्रदान गरेका छन् त्यसद्वारा तिमीहरूलाई (उनी) जाँच्न (चाहन्छन्) । त्यसकारण पुण्यकार्य गर्नमा परस्पर प्रतिस्पर्धा गर ।

अल्लाहतर्फ नै तिमीहरू सबैले फर्केर जानु छ; तब उनले तिमीहरूलाई त्यसप्रति अवगत गराउने छन् जसप्रति तिमीहरू परस्पर मतभेद राख्दथ्यौ ।

وَأَنِ احْكُمْ بَيْنَهُمْ بِمَآ أَنْزَلَ اللّٰهُ وَلَا تَتَّبِعْ أَهْوَآءَهُمْ وَاحْذَرْهُمْ أَنْ يَّفْتِنُوْكَ عَنْ بَعْضِ مَآ أَنْزَلَ اللّٰهُ إِلَيْكَ ۖ فَإِنْ تَوَلَّوْا فَاعْلَمْ أَنَّمَا يُرِيْدُ اللّٰهُ أَنْ يُّصِيْبَهُمْ بِبَعْضِ ذُنُوْبِهِمْ ۗ وَإِنَّ كَثِيْرًا مِّنَ النَّاسِ لَفٰسِقُوْنَ ﴿٥٠﴾

५०. तथा -तिमीलाई के आदेश दिँदै हामीले तिमीप्रति यो पुस्तक अवतीर्ण गरेका छौं भने), अल्लाहले जुन कुरा अवतीर्ण गरेका छन् त्यसद्वारा तिनीहरू बीच फैसला गर्ने गर, तथा तिनीहरूका कुमनोवाञ्छाको अनुसरण नगर, र तिनीहरूबाट सावधान रहने गर, ताकि तिनीहरूले तिमीलाई अल्लाहले तिमीप्रति अवतीर्ण गरेका केही अंशद्वारा सङ्कटमा नपारून् । परन्तु, यदि तिनीहरू विमुख हुन्छन् भने, अल्लाहले तिनीहरूका केही पापका कारण तिनीहरूलाई दण्ड दिने निश्चय गरेका छन् भनी जान । तथा धेरै संख्यामा मानिसहरू त वास्तवमै अवज्ञाकारी रहेका छन् ।

أَفَحُكْمَ الْجَاهِلِيَّةِ يَبْغُوْنَ ۚ وَمَنْ أَحْسَنُ مِنَ اللّٰهِ حُكْمًا لِّقَوْمٍ يُّوْقِنُوْنَ ﴿٥١﴾

५१. के त्यसो भए तिनीहरू अज्ञानतापूर्ण (युगको) निर्णयको खोजीमा छन्? तथा दृढविश्वासी व्यक्तिहरूका निम्ति अल्लाहभन्दा उत्तम निर्णायक अन्य को हुनसक्छ र?

يٰٓأَيُّهَا الَّذِيْنَ اٰمَنُوْا لَا تَتَّخِذُوا الْيَهُوْدَ وَالنَّصٰرٰٓى أَوْلِيَآءَ ۘ بَعْضُهُمْ أَوْلِيَآءُ بَعْضٍ ۚ وَمَنْ يَّتَوَلَّهُمْ مِّنْكُمْ فَإِنَّهُ مِنْهُمْ ۗ إِنَّ اللّٰهَ لَا يَهْدِي الْقَوْمَ الظّٰلِمِيْنَ ﴿٥٢﴾

५२. हे विश्वासीजन हो ! यहुदी तथा इसाईहरूलाई (अन्तरङ्ग) मित्र नबनाऊ । तिनीहरू एक अर्काका मित्र हुन् । तथा तिमीहरूमध्ये जसले तिनीहरूलाई मित्र बनाउछ त्यो व्यक्ति निश्चय नै तिनीहरूमध्येकै एक हुन पुग्नेछ । निश्चय नै अन्यायी व्यक्तिहरूलाई

अल्लाहले कदापि मार्गप्रदर्शन गर्दैनन् ।

فَتَرَى الَّذِيْنَ فِيْ قُلُوْبِهِمْ مَّرَضٌ يُّسَارِعُوْنَ فِيْهِمْ يَقُوْلُوْنَ نَخْشٰى اَنْ تُصِيْبَنَا دَآئِرَةٌ ۚ فَعَسَى اللّٰهُ اَنْ يَّاْتِيَ بِالْفَتْحِ اَوْ اَمْرٍ مِّنْ عِنْدِهٖ فَيُصْبِحُوْا عَلٰى مَآ اَسَرُّوْا فِيْٓ اَنْفُسِهِمْ نٰدِمِيْنَ ﴿٥٣﴾

५३. तथा तिमीले ती व्यक्तिहरूलाई जसका हृदयमा रोग रहेको छ "हामीमाथि कुनै विपत् आइलाग्ला कि भनी हामी डराउँछौं" भन्दै उनीहरूतर्फ दगुर्दै गरेको देख्नेछौं । सम्भव छ, अल्लाहले कुनै विजय अथवा (अन्य) कुनै अवसर आफ्नातर्फबाट उत्पन्न गरुन्, जसबाट तिनीहरू आफ्ना मनमा लुकाएका कुराहरूप्रति सन्तापित हुनेछन् ।

وَيَقُوْلُ الَّذِيْنَ اٰمَنُوْٓا اَهٰٓؤُلَآءِ الَّذِيْنَ اَقْسَمُوْا بِاللّٰهِ جَهْدَ اَيْمَانِهِمْ ۙ اِنَّهُمْ لَمَعَكُمْ ۚ حَبِطَتْ اَعْمَالُهُمْ فَاَصْبَحُوْا خٰسِرِيْنَ ﴿٥٤﴾

५४. तथा तिनीहरू जसले विश्वास स्थापना गरे, भन्नेछन्, "के यिनीहरू नै ती व्यक्तिहरू हुन् जसले आफ्नो दृढ वचनका साथ अल्लाहको नाममा सपथ खादैं तिनीहरू निश्चयपूर्वक तिमीहरूका साथ छन् भनी भनेका थिए?" तिनीहरूका कार्यहरू व्यर्थ भएका छन् तथा तिनीहरू हानि बेहोर्ने व्यक्तिहरू बन्न पुगेका छन् ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا مَنْ يَّرْتَدَّ مِنْكُمْ عَنْ دِيْنِهٖ فَسَوْفَ يَاْتِي اللّٰهُ بِقَوْمٍ يُّحِبُّهُمْ وَيُحِبُّوْنَهٗٓ ۙ اَذِلَّةٍ عَلَى الْمُؤْمِنِيْنَ اَعِزَّةٍ عَلَى الْكٰفِرِيْنَ ۫ يُجَاهِدُوْنَ فِيْ سَبِيْلِ اللّٰهِ وَلَا يَخَافُوْنَ لَوْمَةَ لَآئِمٍ ۚ ذٰلِكَ فَضْلُ اللّٰهِ يُؤْتِيْهِ مَنْ يَّشَآءُ ۚ وَاللّٰهُ وَاسِعٌ عَلِيْمٌ ﴿٥٥﴾

५५. हे विश्वासीजन हो ! तिमीहरूमध्ये जुन व्यक्ति आफ्नो धर्मबाट विमुख हुन्छ, (त्यसले के ज्ञात राखोस् भने) अल्लाहले (त्यसको स्थानमा) शीघ्र नै एउटा यस्तो जातिलाई ल्याउनेछन् जसलाई उनले प्रेम गर्नेछन् तथा तिनीहरूले उनीसँग प्रेम गर्नेछन्, तथा जो विश्वासीहरूप्रति दयालु र विनम्र (हुनेछन्) र अविश्वासीहरूप्रति कठोर तथा दृढ । तिनीहरूले अल्लाहका मार्गमा सङ्घर्ष गर्नेछन् तथा कुनै दोषारोपण गर्ने व्यक्तिको निन्दाप्रति

डराउनेछैनन् । यो अल्लाहको अनुग्रह हो; उनले जसलाई इच्छा गर्छन् त्यसलाई प्रदान गर्छन्; तथा अल्लाह अति दानशील, सर्वज्ञ छन् ।

५६. तिमीहरूका मित्र भनेका केवल अल्लाह र उनका सन्देशवाहक तथा ती विश्वासीजनहरू हुन् जसले नमाज अनुष्ठान गर्छन् तथा जगात तिर्छन् उनीतर्फ (पूर्ण निष्कपटताका साथ) झुक्दै ।

إِنَّمَا وَلِيُّكُمُ اللّٰهُ وَرَسُوْلُهٗ وَالَّذِيْنَ اٰمَنُوا الَّذِيْنَ يُقِيْمُوْنَ الصَّلٰوةَ وَيُؤْتُوْنَ الزَّكٰوةَ وَهُمْ رٰكِعُوْنَ ﴿٥٥﴾

५७. तथा जसले अल्लाह र उनका सन्देशवाहक तथा विश्वासीजनहरूलाई मित्र बनाउँछन् अल्लाहको दल नै अनिवार्यरूपमा विजयी हुन्छ (भन्ने कुरामा ढुक्क परून्) ।

وَمَنْ يَّتَوَلَّ اللّٰهَ وَرَسُوْلَهٗ وَالَّذِيْنَ اٰمَنُوْا فَاِنَّ حِزْبَ اللّٰهِ هُمُ الْغٰلِبُوْنَ ﴿٥٦﴾ ع

५८. हे विश्वासजन हो ! जसलाई तिमीहरूभन्दा अघि पुस्तक प्रदान गरिएको थियो तिनीहरूमध्ये जसले तिमीहरूको धर्मलाई ठट्टा र खेलसरह बनाएका छन् तिनलाई तथा अविश्वासी व्यक्तिहरूलाई आफ्ना मित्र नबनाऊ । तथा यदि तिमीहरू विश्वासी हौ भने अल्लाहप्रति डराऊ;

يٰۤاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا لَا تَتَّخِذُوا الَّذِيْنَ اتَّخَذُوْا دِيْنَكُمْ هُزُوًا وَّلَعِبًا مِّنَ الَّذِيْنَ اُوْتُوا الْكِتٰبَ مِنْ قَبْلِكُمْ وَالْكُفَّارَ اَوْلِيَآءَ ۚ وَاتَّقُوا اللّٰهَ اِنْ كُنْتُمْ مُّؤْمِنِيْنَ ﴿٥٧﴾

५९. तथा (ती व्यक्तिहरू), जसले तिमीहरूका (मानिसहरूलाई) नमाजका निम्ति आव्हान गर्दा त्यसलाई ठट्टा र ख्याल ख्याल ठान्छन् । कारण, तिनीहरू यस्ता व्यक्तिहरू हुन् जसमा बोधशक्ति छैन् ।

وَاِذَا نَادَيْتُمْ اِلَى الصَّلٰوةِ اتَّخَذُوْهَا هُزُوًا وَّلَعِبًا ۚ ذٰلِكَ بِاَنَّهُمْ قَوْمٌ لَّا يَعْقِلُوْنَ ﴿٥٨﴾

६०. तिमी भन, "हे पुस्तकप्राप्त व्यक्ति हो ! के हामीले अल्लाहप्रति तथा जुन

قُلْ يٰۤاَهْلَ الْكِتٰبِ هَلْ تَنْقِمُوْنَ مِنَّاۤ

إِلَّآ أَنْ آمَنَّا بِاللّٰهِ وَمَآ أُنْزِلَ إِلَيْنَا وَمَآ أُنْزِلَ مِنْ قَبْلُ ۙ وَأَنَّ أَكْثَرَكُمْ فٰسِقُوْنَ ﴿٦٠﴾

कुरा हामीप्रति अवतीर्ण गरिएको छ र जुन कुरा हामीभन्दा पहिला अवतीर्ण गरिएको थियो त्यसप्रति विश्वास स्थापना गरेकै कारण तिमीहरू हामीलाई दोषी ठान्छौ ? अथवा (के) तिमीहरूमध्ये धेरैजसो (अल्लाहका) अवज्ञाकारी रहेका (कारण)?"

قُلْ هَلْ أُنَبِّئُكُمْ بِشَرٍّ مِّنْ ذٰلِكَ مَثُوْبَةً عِنْدَ اللّٰهِ ۚ مَنْ لَّعَنَهُ اللّٰهُ وَغَضِبَ عَلَيْهِ وَجَعَلَ مِنْهُمُ الْقِرَدَةَ وَالْخَنَازِيْرَ وَعَبَدَ الطَّاغُوْتَ ۚ أُولٰٓئِكَ شَرٌّ مَّكَانًا وَّأَضَلُّ عَنْ سَوَآءِ السَّبِيْلِ ﴿٦١﴾

६१. तिमी भन, "के म तिमीहरूलाई तिनीहरूको जानकारी दिऊँ जसको पारितोषिक अल्लाहसमक्ष त्योभन्दा पनि निकृष्ट रहेको छ?" (तिनीहरू) ती व्यक्तिहरू नै हुन् जसप्रति अल्लाहले अभिशाप गरेका छन् तथा जसप्रति उनको कोपवृष्टि भएको छ । तथा तिनीमध्ये केहीलाई उनले बाँदर र सुँगुर बनाएका छन् र (जसले) सैतानको उपासना गर्छन् । तिनीहरूको अवस्था निकृष्ट रहेको छ र तिनीहरू सन्मार्गबाट सुदूर विपथगामी भएर गएका छन् ।

وَإِذَا جَآءُوْكُمْ قَالُوْٓا آمَنَّا وَقَدْ دَّخَلُوْا بِالْكُفْرِ وَهُمْ قَدْ خَرَجُوْا بِهٖ ۚ وَاللّٰهُ أَعْلَمُ بِمَا كَانُوْا يَكْتُمُوْنَ ﴿٦٢﴾

६२. तथा जब तिनीहरू तिमीहरूसमक्ष आउँछन्, तब भन्छन्, "हामी विश्वास गर्छौं," वस्तुतः तिनीहरू अविश्वासका साथ दाखिल भए र त्यसैका साथ बाहिर निस्किएर गए । तथा जुन कुरा तिनीहरू लुकाउँछन् त्यसलाई अल्लाहले सर्वाधिक जान्दछन् ।

وَتَرٰى كَثِيْرًا مِّنْهُمْ يُسَارِعُوْنَ فِي الْإِثْمِ وَالْعُدْوَانِ وَأَكْلِهِمُ السُّحْتَ ۚ لَبِئْسَ مَا كَانُوْا يَعْمَلُوْنَ ﴿٦٣﴾

६३. तिनीहरूमध्ये धेरैजसोलाई पाप र सीमोलङ्घन तथा अवैध वस्तुहरूको भक्षणतर्फ शीघ्रतापूर्वक अघि बढेको तिमीले देख्ने गर्छौ । जुन कार्य तिनीहरूले गर्छन् त्यो निश्चय नै अति

नराम्रो रहेको छ ।

لَوْلَا يَنْهَاهُمُ الرَّبَّانِيُّونَ وَالْأَحْبَارُ
عَنْ قَوْلِهِمُ الْإِثْمَ وَأَكْلِهِمُ السُّحْتَ ۚ
لَبِئْسَ مَا كَانُوا يَصْنَعُونَ ﴿٦٣﴾

६४. तत्त्वविद् (ब्रह्मज्ञानी) तथा विधानज्ञ व्यक्तिहरू तिनीहरूलाई मिथ्याभाषण र अवैध वस्तुहरूको भक्षण कार्यबाट किन रोक्दैनन्? जुन कुरा तिनीहरूले (प्रकट) गर्छन् त्यो वास्तवमा अति नराम्रो रहेको छ ।

وَقَالَتِ الْيَهُودُ يَدُ اللَّهِ مَغْلُولَةٌ ۚ
غُلَّتْ أَيْدِيهِمْ وَلُعِنُوا بِمَا قَالُوا ۘ بَلْ
يَدَاهُ مَبْسُوطَتَانِ يُنْفِقُ كَيْفَ يَشَاءُ ۚ
وَلَيَزِيدَنَّ كَثِيرًا مِنْهُمْ مَا أُنْزِلَ
إِلَيْكَ مِنْ رَبِّكَ طُغْيَانًا وَكُفْرًا ۚ وَ
أَلْقَيْنَا بَيْنَهُمُ الْعَدَاوَةَ وَالْبَغْضَاءَ
إِلَىٰ يَوْمِ الْقِيَامَةِ ۚ كُلَّمَا أَوْقَدُوا نَارًا
لِلْحَرْبِ أَطْفَأَهَا اللَّهُ ۚ وَيَسْعَوْنَ فِي
الْأَرْضِ فَسَادًا ۚ وَاللَّهُ لَا يُحِبُّ
الْمُفْسِدِينَ ﴿٦٤﴾

६५. तथा यहुदीहरू भन्छन्, "अल्लाहका हात बाँधिएका छन् ।" तिनीहरूका (आफ्नै) हात बाँधिएका छन् तथा तिनीहरूले भनेका कुराहरूको फलस्वरूप तिनीहरू अभिशापित हुनेछन् । होइन, वास्तवमा उनका दुबैहात खुला छन्; उनले जसरी चाहन्छन् खर्च गर्छन् । तथा जुन कुरा तिमीप्रति तिम्रा प्रतिपालकको तर्फबाट अवतीर्ण गरिएको छ त्यसले तिनीहरूमध्ये धेरैलाई अवश्य नै विरोधाचरण र अविश्वासमा अघि बढाउनेछ । तथा हामीले पुनरुत्थानका दिनसम्मका निम्ति तिनीहरूबीच शत्रुता र घृणा उत्पन्न गरिदिएका छौं । जब जब तिनीहरूले युद्धका निम्ति अग्नि प्रज्वलित पारे, अल्लाहले त्यसलाई निभाए । तथा तिनीहरू धर्तीमा अशान्ति फैलाउने प्रयासमा रहन्छन्, तथा जसले अशान्तिको सिर्जना गर्छन् तिनीहरूलाई अल्लाहले मन पराउँदैनन्

وَلَوْ أَنَّ أَهْلَ الْكِتَابِ آمَنُوا وَاتَّقَوْا
لَكَفَّرْنَا عَنْهُمْ سَيِّئَاتِهِمْ وَلَأَدْخَلْنَاهُمْ
جَنَّاتِ النَّعِيمِ ﴿٦٥﴾

६६. तथा यदि पुस्तकप्राप्त व्यक्तिहरूले विश्वास स्थापना गरेका र पुण्यकार्य गरेका भए, हामी निश्चय नै तिनीहरूबाट तिनीहरूका दुर्गुणहरू

मेटाउने थियौं तथा निश्चय नै तिनीहरूलाई वैभवपूर्ण बगैंचामा प्रवेश गराउने थियौं ।

६७. तथा यदि तिनीहरूले तौरात र इन्जिल तथा तिनीहरूप्रति तिनीहरूका प्रतिपालकका तर्फबाट (अब) अवतीर्ण भएको कुराको पालना गरेका भए, तिनीहरूले निश्चय नै आफ्ना माथिबाट तथा आफ्ना पाउमुनिबाट प्राप्त उत्तम वस्तुहरू खाने थिए । तिनीहरूमध्ये मानिसहरूको एउटा यस्तो समुदाय छ जसमा मध्यमार्गी व्यक्तिहरू छन्; परन्तु तिनीहरूमध्ये अधिकतर व्यक्तिहरूका कार्यहरू भने निःसन्देह अति निकृष्ट रहेका छन् ।

وَلَوْ أَنَّهُمْ أَقَامُوا التَّوْرٰىةَ وَالْاِنْجِيْلَ وَمَآ اُنْزِلَ اِلَيْهِمْ مِّنْ رَّبِّهِمْ لَاَكَلُوْا مِنْ فَوْقِهِمْ وَمِنْ تَحْتِ اَرْجُلِهِمْ ۚ مِنْهُمْ اُمَّةٌ مُّقْتَصِدَةٌ ۚ وَكَثِيْرٌ مِّنْهُمْ سَآءَ مَا يَعْمَلُوْنَ ﴿٦٦﴾

६८. हे सन्देशवाहक ! जुनकुरा तिमीप्रति तिम्रा प्रतिपालकका तर्फबाट अवतीर्ण गरिएको छ त्यसलाई (मानिसहरूसमक्ष) पुऱ्याउ । तथा यदि तिमीले त्यसो गरेनौ भने मानौं तिमीले उनको सन्देश बिलकुलै) पुऱ्याएनौ । तथा अल्लाहले तिमीलाई मानिसहरूबाट सुरक्षित राख्नेछन् । निश्चय नै, अल्लाहले अविश्वासी व्यक्तिहरूलाई मार्गदर्शन गर्दैनन् ।

يٰٓاَيُّهَا الرَّسُوْلُ بَلِّغْ مَآ اُنْزِلَ اِلَيْكَ مِنْ رَّبِّكَ ۚ وَاِنْ لَّمْ تَفْعَلْ فَمَا بَلَّغْتَ رِسٰلَتَهٗ ۚ وَاللّٰهُ يَعْصِمُكَ مِنَ النَّاسِ ۚ اِنَّ اللّٰهَ لَا يَهْدِى الْقَوْمَ الْكٰفِرِيْنَ ﴿٦٧﴾

६९. तिमी भन, “हे पुस्तकप्राप्त मानिस हो ! जबसम्म तिमीहरू तौरात र इन्जिल (Gospel) तथा (अब) तिमीहरूप्रति तिमीहरूका प्रतिपालकका तर्फबाट अवतीर्ण भएको कुराको पालना गर्दैनौ, तबसम्म तिमीहरू कुनै कुराप्रति (स्थिर) छैनौ ।” तथा निश्चय

قُلْ يٰٓاَهْلَ الْكِتٰبِ لَسْتُمْ عَلٰى شَيْءٍ حَتّٰى تُقِيْمُوا التَّوْرٰىةَ وَالْاِنْجِيْلَ وَمَآ اُنْزِلَ اِلَيْكُمْ مِّنْ رَّبِّكُمْ ۚ وَلَيَزِيْدَنَّ كَثِيْرًا مِّنْهُمْ مَّآ اُنْزِلَ اِلَيْكَ مِنْ رَّبِّكَ طُغْيَانًا وَّكُفْرًا ۚ فَلَا تَاْسَ عَلَى الْقَوْمِ الْكٰفِرِيْنَ ﴿٦٨﴾

नै जुन कुरा तिमीप्रति तिम्रा प्रतिपालकका तर्फबाट अवतीर्ण भएको छ, त्यसले तिनीहरूमध्ये धेरै व्यक्तिहरूलाई विरोधाचरण तथा अविश्वासतर्फ अघि बढाउनेछ; त्यसकारण तिमी अविश्वासी व्यक्तिहरूका निम्ति चिन्तित नहोउ ।

إِنَّ الَّذِينَ آمَنُوا وَالَّذِينَ هَادُوا وَالصَّابِئُونَ وَالنَّصَارَىٰ مَنْ آمَنَ بِاللَّهِ وَالْيَوْمِ الْآخِرِ وَعَمِلَ صَالِحًا فَلَا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُونَ ﴿٧٠﴾

७०. निश्चय नै, ती व्यक्तिहरू जसले विश्वास स्थापना गरेका छन् तथा ती यहुदीहरू, तथा साबीहरू, तथा इसाईहरू जसले अल्लाहप्रति र अन्तिम दिनप्रति विश्वास गर्छन् तथा पुण्यकार्य गर्ने गर्छन्, तिनीहरू न त भयाक्रान्त (हुनेछन्) न चिन्ताग्रस्त नै ।

لَقَدْ أَخَذْنَا مِيثَاقَ بَنِي إِسْرَائِيلَ وَأَرْسَلْنَا إِلَيْهِمْ رُسُلًا ۖ كُلَّمَا جَاءَهُمْ رَسُولٌ بِمَا لَا تَهْوَىٰ أَنْفُسُهُمْ فَرِيقًا كَذَّبُوا وَفَرِيقًا يَقْتُلُونَ ﴿٧١﴾

७१. निश्चय नै, हामीले इजरायलका सन्तानबाट दृढ अङ्गीकार लिएका थियौं, तथा हामीले तिनीहरूतर्फ सन्देशवाहकहरू पठाएका थियौं । परन्तु जब जब तिनीहरूसमक्ष कुनै सन्देशवाहक तिनीहरूका हृदयले नरुचाउने कुरा लिएर आए, तब तिनीहरूमध्ये केहीलाई उनीहरूले मिथ्यावादीस्वरूप व्यवहार गरे तथा अन्य केहीको चाहिँ उनीहरूले हत्या गर्ने प्रयासमा रहे ।

وَحَسِبُوا أَلَّا تَكُونَ فِتْنَةٌ فَعَمُوا وَصَمُّوا ثُمَّ تَابَ اللَّهُ عَلَيْهِمْ ثُمَّ عَمُوا وَصَمُّوا كَثِيرٌ مِنْهُمْ ۚ وَاللَّهُ بَصِيرٌ بِمَا يَعْمَلُونَ ﴿٧٢﴾

७२. तथा तिनीहरूले कुनै दण्ड भोग्नु पर्दैन भन्ने धारणा राख्दथे, त्यसकारण तिनीहरू अन्धा र बहिरा हुन पुगे । परन्तु अल्लाहले करुणापूर्वक तिनीहरूतर्फ कृपादृष्टि गरे; त्यसपछि पुनः तिनीहरूमध्ये धेरै व्यक्तिहरू अन्धा र बहिरा भए; तथा जुन कार्य

तिनीहरूले गर्छन् त्यसलाई अल्लाहले देखिरहेछन् ।

لَقَدْ كَفَرَ الَّذِيْنَ قَالُوْٓا اِنَّ اللّٰهَ هُوَ الْمَسِيْحُ ابْنُ مَرْيَمَ ۚ وَقَالَ الْمَسِيْحُ يٰبَنِيْٓ اِسْرَآءِيْلَ اعْبُدُوا اللّٰهَ رَبِّيْ وَرَبَّكُمْ ۚ اِنَّهٗ مَنْ يُّشْرِكْ بِاللّٰهِ فَقَدْ حَرَّمَ اللّٰهُ عَلَيْهِ الْجَنَّةَ وَمَاْوٰىهُ النَّارُ ۚ وَمَا لِلظّٰلِمِيْنَ مِنْ اَنْصَارٍ ﴿٧٢﴾

७३. जुन व्यक्तिहरूले "अल्लाह नै वास्तवमा मरियमपुत्र मसीह हुन्," भनी भनेका छन् तिनीहरू निस्सन्देह अविश्वासी हुन पुगेका छन् । वस्तुतः मसीह (स्वयम्)ले भनेका थिए, "हे इजरायलका सन्तान हो ! तिमीहरू अल्लाहको उपासना गर जुन मेरा प्रतिपालक तथा तिमीहरूका प्रतिपालक हुन् ।" निश्चय नै, जसले अल्लाहको कुनै (समकक्ष) भागीदार बनाउँछ त्यसका निम्ति अल्लाहले स्वर्ग निषिद्ध गरेका छन्, तथा त्यसको निवास अग्नि हुनेछ । तथा अन्यायकारीहरूको कोही सहयोगी हुनेछैन ।

لَقَدْ كَفَرَ الَّذِيْنَ قَالُوْٓا اِنَّ اللّٰهَ ثَالِثُ ثَلٰثَةٍ ۘ وَمَا مِنْ اِلٰهٍ اِلَّآ اِلٰهٌ وَّاحِدٌ ۚ وَاِنْ لَّمْ يَنْتَهُوْا عَمَّا يَقُوْلُوْنَ لَيَمَسَّنَّ الَّذِيْنَ كَفَرُوْا مِنْهُمْ عَذَابٌ اَلِيْمٌ ﴿٧٣﴾

७४. जसले "अल्लाह तीनमध्ये एक हुन्" भन्छन् तिनीहरू अवश्य नै अविश्वासी रहेका छन्; कोही उपास्य छैन, परन्तु एक उपास्य छन् । तथा तिनीहरू जे भन्ने गर्छन् त्यसलाई परित्याग गरेनन् भने तिनीहरूमध्ये अविश्वासी व्यक्तिहरूमाथि निश्चय नै पीडादायक दण्ड आइपर्नेछ ।

اَفَلَا يَتُوْبُوْنَ اِلَى اللّٰهِ وَيَسْتَغْفِرُوْنَهٗ ۚ وَاللّٰهُ غَفُوْرٌ رَّحِيْمٌ ﴿٧٤﴾

७५. त्यसो भए के तिनीहरू अल्लाहतर्फ फर्कने छैनन् र उनीसँग क्षमायाचना गर्नेछैनन् त? वस्तुतः अल्लाह परम क्षमाशील, परम दानशील छन् ।

مَا الْمَسِيْحُ ابْنُ مَرْيَمَ اِلَّا رَسُوْلٌ ۚ قَدْ خَلَتْ مِنْ قَبْلِهِ الرُّسُلُ ۚ وَ اُمُّهٗ

७६. मरियमपुत्र, मसीह एकजना सन्देशवाहकबाहेक केही थिएनन्; उनी भन्दा अघिका सबै सन्देशवाहकहरूले

صِدِّيقَةٌ ۖ كَانَا يَأْكُلَانِ الطَّعَامَ ۗ انظُرْ كَيْفَ نُبَيِّنُ لَهُمُ الْآيَاتِ ثُمَّ انظُرْ أَنَّىٰ يُؤْفَكُونَ ﴿٧٥﴾

मृत्युवरण गरिसकेका छन् । तथा उनकी माता सत्यनिष्ठा थिइन् । तिनीहरू दुबैजना भोजन गर्ने गर्थे । हेर हामी तिनीहरूको भलाइका निम्ति कसरी चिह्नहरूको व्याख्या गर्छौं, तथा हेर तिनीहरू कसरी विमुख गरिन्छन् ।

قُلْ أَتَعْبُدُونَ مِن دُونِ اللَّهِ مَا لَا يَمْلِكُ لَكُمْ ضَرًّا وَلَا نَفْعًا ۚ وَاللَّهُ هُوَ السَّمِيعُ الْعَلِيمُ ﴿٧٦﴾

७७. तिमी भन, "के तिमीहरू अल्लाहलाई छाडी त्यस वस्तुको उपासना गर्छौं जसमा तिमीहरूलाई हानि पुऱ्याउने अथवा भलो गर्ने शक्ति छैन ?" तथा अल्लाह नै सर्वश्रोता, सर्वज्ञ (पनि) छन् ।

قُلْ يَا أَهْلَ الْكِتَابِ لَا تَغْلُوا فِي دِينِكُمْ غَيْرَ الْحَقِّ وَلَا تَتَّبِعُوا أَهْوَاءَ قَوْمٍ قَدْ ضَلُّوا مِن قَبْلُ وَأَضَلُّوا كَثِيرًا وَضَلُّوا عَن سَوَاءِ السَّبِيلِ ﴿٧٧﴾

७८. तिमी भन, "हे पुस्तकप्राप्त मानिसहरू हो ! आफ्ना धर्म(का मामिला)मा अन्यायपूर्वक सीमोल्लङ्घन गर्ने नगर, तथा ती व्यक्तिहरूको कुमनोवाञ्छाहरूको अनुसरण नगर जुन व्यक्तिहरू यसअघि नै आफू पनि विपथगामी भएका छन् र अन्य धेरै व्यक्तिहरूलाई पनि तिनीहरूले विपथगामी तुल्याएका छन्, तथा (जो) सन्मार्गबाट विचलित भएका छन् ।"

لُعِنَ الَّذِينَ كَفَرُوا مِن بَنِي إِسْرَائِيلَ عَلَىٰ لِسَانِ دَاوُودَ وَعِيسَى ابْنِ مَرْيَمَ ۚ ذَٰلِكَ بِمَا عَصَوا وَّكَانُوا يَعْتَدُونَ ﴿٧٨﴾

७९. इजरायलका सन्तानहरूमध्ये ती व्यक्तिहरूलाई जसले अविश्वास गरेका छन् दाऊद र मरियमपुत्र, इसाका मुखबाट श्राप दिइएको छ- कारण तिनीहरूले अवज्ञा गरे र सीमालङ्घन गर्ने गर्थे ।

كَانُوا لَا يَتَنَاهَوْنَ عَن مُّنكَرٍ فَعَلُوهُ ۚ لَبِئْسَ مَا كَانُوا يَفْعَلُونَ ﴿٧٩﴾

८०. तिनीहरू आफूले गर्ने गरेको दुर्व्यवहारबाट परस्पर एक-अर्कालाई रोक्दैनथे । तिनीहरूले जुन कार्य गर्ने

गर्थे त्यो अति निकृष्ट थियो ।

८१. तिनीहरूमध्ये धेरैले अविश्वासी व्यक्तिहरूलाई (आफ्ना) मित्र बनाएको तिमीले देख्नेछौ । तिनीहरूले आफैंले आफ्ना खातिर जुन कुरा अघि पठाएका छन् त्यो कुरा निश्चय नै अति निकृष्ट रहेको छ; (त्यसको फलस्वरूप) अल्लाह तिनीसित अप्रसन्न भएका छन्; तथा तिनीहरूले (त्यो) दण्ड सदा भोग्नेछन् ।

تَرَىٰ كَثِيرًا مِّنْهُمْ يَتَوَلَّوْنَ الَّذِينَ كَفَرُوا ۚ لَبِئْسَ مَا قَدَّمَتْ لَهُمْ أَنفُسُهُمْ أَن سَخِطَ اللَّهُ عَلَيْهِمْ وَفِي الْعَذَابِ هُمْ خَالِدُونَ ﴿٨٠﴾

८२. तथा यदि तिनीहरूले अल्लाहप्रति र यस नबी (सिद्ध) प्रति तथा जुनुकरा यसप्रति अवतीर्ण गरिएको छ त्यसप्रति विश्वास गरेका भए, तिनीहरूले उनीहरूलाई (आफ्ना) मित्रस्वरूप ग्रहण गर्ने थिएनन्, परन्तु तिनीहरूमध्ये धेरैजसो अवज्ञाकारी रहेका छन् ।

وَلَوْ كَانُوا يُؤْمِنُونَ بِاللَّهِ وَالنَّبِيِّ وَمَا أُنزِلَ إِلَيْهِ مَا اتَّخَذُوهُمْ أَوْلِيَاءَ وَلَٰكِنَّ كَثِيرًا مِّنْهُمْ فَاسِقُونَ ﴿٨١﴾

८३. विश्वासीजनहरूकाविरुद्ध शत्रुताका सवालमा तिमीले यहुदीहरूलाई र ती व्यक्तिहरूलाई जसले (अरूलाई अल्लाहका) समकक्ष (भागीदार) बनाउने गर्छन् अवश्य सबैभन्दा कठोर पाउनेछौ । तथा तिनीहरूमध्ये विश्वासीहरूसँग प्रेम गर्ने मामिलामा तिमीले ती व्यक्तिहरूलाई सबैभन्दा नजीक पाउनेछौ जो "हामी इसाई हौं" भन्ने गर्छन् । यसको कारण के हो भने तिनीहरूमध्ये केही व्यक्तिहरू विद्वान् र सन्यासी (प्रवृत्तिका) रहेका छन् तथा तिनीहरू अहङ्कारी छैनन् ।

لَتَجِدَنَّ أَشَدَّ النَّاسِ عَدَاوَةً لِّلَّذِينَ آمَنُوا الْيَهُودَ وَالَّذِينَ أَشْرَكُوا ۖ وَلَتَجِدَنَّ أَقْرَبَهُم مَّوَدَّةً لِّلَّذِينَ آمَنُوا الَّذِينَ قَالُوا إِنَّا نَصَارَىٰ ۚ ذَٰلِكَ بِأَنَّ مِنْهُمْ قِسِّيسِينَ وَرُهْبَانًا وَأَنَّهُمْ لَا يَسْتَكْبِرُونَ ﴿٨٢﴾

८४. तथा जब तिनीहरूले यस सन्देशवाहकप्रति अवतीर्ण गरिएको कुराबारे सुन्छन् तब आफू (त्यसरी) सत्यबारे परिचित भएर तिनीहरूले

وَإِذَا سَمِعُوا مَا أُنزِلَ إِلَى الرَّسُولِ تَرَىٰ أَعْيُنَهُمْ تَفِيضُ مِنَ

الدَّمْعِ مِمَّا عَرَفُوا مِنَ الْحَقِّ ۚ يَقُولُونَ رَبَّنَا آمَنَّا فَاكْتُبْنَا مَعَ الشَّاهِدِينَ ﴿٨٣﴾

आँखाभरि आँसु बगाएको तिमीले देख्छौ । तिनीहरू भन्छन् "हे हाम्रा प्रतिपालक, हामी विश्वास गर्छौं, त्यसकारण हाम्रो नाम ती व्यक्तिहरूसँग लेखियोस् जसले साक्षी दिन्छन् ।

وَمَا لَنَا لَا نُؤْمِنُ بِاللَّهِ وَمَا جَاءَنَا مِنَ الْحَقِّ ۙ وَنَطْمَعُ أَنْ يُدْخِلَنَا رَبُّنَا مَعَ الْقَوْمِ الصَّالِحِينَ ﴿٨٤﴾

८५. "तथा किन हामी अल्लाहप्रति र हामीसमक्ष आएको त्यस सत्यप्रति विश्वास नगरौं, वस्तुतः हामी निश्चयपूर्वक हाम्रा प्रतिपालकले हामीलाई सत्यनिष्ठ व्यक्तिहरूमा सामेल गरुन् भन्ने चाहन्छौं ?"

فَأَثَابَهُمُ اللَّهُ بِمَا قَالُوا جَنَّاتٍ تَجْرِي مِنْ تَحْتِهَا الْأَنْهَارُ خَالِدِينَ فِيهَا ۚ وَذَٰلِكَ جَزَاءُ الْمُحْسِنِينَ ﴿٨٥﴾

८६. अतः तिनीहरूले भनेका कुराको प्रतिदानस्वरूप अल्लाहले तिनीहरूलाई ती बगैंचाहरू प्रदान गरे जसमुनि नहरहरू बग्दछन् । तिनीहरूमा तिनीहरू सदा रहनेछन्; तथा यो ती सत्कार्य गर्ने व्यक्तिहरूको प्रतिदान हो ।

وَالَّذِينَ كَفَرُوا وَكَذَّبُوا بِآيَاتِنَا أُولَٰئِكَ أَصْحَابُ الْجَحِيمِ ﴿٨٦﴾ ع

८७. तथा ती व्यक्तिहरू जसले अविश्वास गरेका छन् तथा हाम्रा चिह्नहरूलाई अस्वीकार गरेका छन्, तिनीहरू नै नर्कबासी हुन् ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا لَا تُحَرِّمُوا طَيِّبَاتِ مَا أَحَلَّ اللَّهُ لَكُمْ وَلَا تَعْتَدُوا ۚ إِنَّ اللَّهَ لَا يُحِبُّ الْمُعْتَدِينَ ﴿٨٧﴾

८८. हे विश्वासीजन हो ! जुन वस्तुहरू अल्लाहले तिमीहरूका निम्ति वैध तुल्याएका छन्, ती पवित्र वस्तुहरूलाई अवैध नठहऱ्याऊ तथा सीमोल्लङ्घन नगर । निश्चय नै, अल्लाहले सीमोल्लङ्घनकारीहरूलाई मनपराउँदैनन् ।

وَكُلُوا مِمَّا رَزَقَكُمُ اللَّهُ حَلَالًا طَيِّبًا ۚ وَاتَّقُوا اللَّهَ الَّذِي أَنْتُمْ بِهِ مُؤْمِنُونَ ﴿٨٨﴾

८९. तथा अल्लाहले तिमीहरूलाई प्रदान गरेका वस्तुहरूमध्येबाट वैध र उत्तम वस्तुहरू खाने गर । तथा अल्लाहसँग डराऊ जसमाथि तिमीहरू विश्वास राख्छौ

لَا يُؤَاخِذُكُمُ اللَّهُ بِاللَّغْوِ فِي أَيْمَانِكُمْ

९०. अल्लाहले तिमीहरूलाई (त्यस्ता) व्यर्थ शपथहरूका लागि जवाफदेही ठहऱ्याउने

وَلٰكِنْ يُّؤَاخِذُكُمْ بِمَا عَقَّدْتُّمُ الْاَيْمَانَ ۚ فَكَفَّارَتُهٗۤ اِطْعَامُ عَشَرَةِ مَسٰكِيْنَ مِنْ اَوْسَطِ مَا تُطْعِمُوْنَ اَهْلِيْكُمْ اَوْ كِسْوَتُهُمْ اَوْ تَحْرِيْرُ رَقَبَةٍ ؕ فَمَنْ لَّمْ يَجِدْ فَصِيَامُ ثَلٰثَةِ اَيَّامٍ ؕ ذٰلِكَ كَفَّارَةُ اَيْمَانِكُمْ اِذَا حَلَفْتُمْ ؕ وَاحْفَظُوْۤا اَيْمَانَكُمْ ؕ كَذٰلِكَ يُبَيِّنُ اللّٰهُ لَكُمْ اٰيٰتِهٖ لَعَلَّكُمْ تَشْكُرُوْنَ ﴿٩٠﴾

छैनन्, परन्तु तिमीहरूले गरेका दृढप्रतिज्ञाहरूप्रति भने उनले तिमीहरूलाई जवाफदेही ठहऱ्याउने छन् । त्यसको प्रायश्चित (शोधन) स्वरूप दसजना गरीब मानिसहरूलाई (त्यस) स्तरको खाना ख्वाउनू जुन तिमीहरू आफ्ना जहान-परिवारलाई ख्वाउने गर्छौ, अथवा तिनीहरूलाई वस्त्र प्रदान गर्नू वा एकजना दासलाई स्वाधीन गर्नू । परन्तु जसले त्यसको सामर्थ्य राख्दैन त्यसले तिनीदनसम्म उपवास राखोस् । तिमीहरूका शपथहरूको यही नै प्रायश्चित रहेको छ जब तिमीहरू (तिनीहरूलाई) खान्छौ। तथा तिमीहरू आफ्ना शपथहरूको रक्षा गर्ने गर । यस प्रकार अल्लाह तिमीहरूसमक्ष आफ्ना चिह्नहरू वर्णन गर्छन्- ताकि तिमीहरू कृतज्ञ बन ।

يٰۤاَيُّهَا الَّذِيْنَ اٰمَنُوْۤا اِنَّمَا الْخَمْرُ وَالْمَيْسِرُ وَالْاَنْصَابُ وَالْاَزْلَامُ رِجْسٌ مِّنْ عَمَلِ الشَّيْطٰنِ فَاجْتَنِبُوْهُ لَعَلَّكُمْ تُفْلِحُوْنَ ﴿٩١﴾

९१. हे विश्वासीजन हो ! मादक पदार्थ र जुवा खेल, मूर्तिहरू तथा तीरचिह्ना इत्यादि सैतानका हातका घृणित कार्यहरू हुन् । त्यसकारण यी सबै कार्यहरूबाट बच ताकि तिमीहरू कृतार्थ हुन सक ।

اِنَّمَا يُرِيْدُ الشَّيْطٰنُ اَنْ يُّوْقِعَ بَيْنَكُمُ الْعَدَاوَةَ وَالْبَغْضَآءَ فِى الْخَمْرِ وَالْمَيْسِرِ وَيَصُدَّكُمْ عَنْ ذِكْرِ اللّٰهِ وَعَنِ الصَّلٰوةِ ۚ فَهَلْ اَنْتُمْ مُّنْتَهُوْنَ ﴿٩٢﴾

९२. मादक पदार्थ र जुवा खेलद्वारा सैतानले केवल तिमीहरू बीच शत्रुता र घृणाभाव उत्पन्न गर्न चाहन्छ, तथा तिमीहरूलाई अल्लाहको स्मरण र उपासनाबाट रोक्न चाहन्छ । परन्तु के तिमीहरू रोकिन्छौ?

وَاَطِيْعُوا اللّٰهَ وَاَطِيْعُوا الرَّسُوْلَ وَاحْذَرُوْا ۚ فَاِنْ تَوَلَّيْتُمْ فَاعْلَمُوْۤا اَنَّمَا عَلٰى رَسُوْلِنَا الْبَلٰغُ الْمُبِيْنُ ﴿٩٣﴾

९३. तथा अल्लाह तथा सन्देशवाहकको आज्ञापालन गर, तथा सतर्क रहने गर । परन्तु यदि तिमीहरू विमुख भयौ भने, के जानि राख भने हाम्रा सन्देशवाहकका जिम्मामा त केवल स्पष्टरूपमा सन्देश पुऱ्याउने (कार्य मात्र) रहेको छ ।

९४. ती व्यक्तिहरू जसले विश्वास गर्छन् र पुण्यकार्य गर्छन् यदि तिनीहरू (अल्लाहसित) डराउँछन् र विश्वास गर्छन् तथा पुण्यकार्य गर्छन् भने (तथा) पुनः (अल्लाहसित) डराउँछन् र विश्वास गर्छन्, तत्पश्चात् पुनः -अल्लाहसित) डराउँछन् र पुण्यकार्य गर्छन् भने जुन वस्तु तिनीहरूले खान्छन् त्यसप्रति तिनीहरूलाई कुनै पाप लाग्नेछैन । तथा अल्लाहले पुण्यकार्य गर्ने व्यक्तिहरूलाई मन पराउँछन् ।

لَيْسَ عَلَى الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ جُنَاحٌ فِيْمَا طَعِمُوْٓا اِذَا مَا اتَّقَوْا وَّاٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ ثُمَّ اتَّقَوْا وَّاٰمَنُوْا ثُمَّ اتَّقَوْا وَّاَحْسَنُوْا ۚ وَاللّٰهُ يُحِبُّ الْمُحْسِنِيْنَ ﴿٩٣﴾

९५. हे विश्वासीजन हो ! अल्लाहले तिमीहरूलाई एउटा (साधारण) कुरा अर्थात् त्यस शिकारद्वारा अवश्य जाँच्नेछन् जससम्म तिम्रा हात र भालाको पहुँच हुनेछ,- ताकि अल्लाहले ती व्यक्तिहरूलाई प्रकट गर्न सकुन जो गोप्यरूपमा उनको डर राख्छन् । अतः जसले त्यसपश्चात् सीमोल्लङ्घन गर्नेछ त्यसले पीडादायक दण्ड भोग्नेछ ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا لَيَبْلُوَنَّكُمُ اللّٰهُ بِشَيْءٍ مِّنَ الصَّيْدِ تَنَالُهٗٓ اَيْدِيْكُمْ وَرِمَاحُكُمْ لِيَعْلَمَ اللّٰهُ مَنْ يَّخَافُهٗ بِالْغَيْبِ ۚ فَمَنِ اعْتَدٰى بَعْدَ ذٰلِكَ فَلَهٗ عَذَابٌ اَلِيْمٌ ﴿٩٤﴾

९६. हे विश्वासीजन हो ! तीर्थवासका (हजको) अवस्थामा शिकार मार्ने नगर । तथा तिमीहरूमध्ये जसले जानीबुझीकन त्यसलाई मार्छ, त्यसको क्षतिपूर्ति तिमीहरूमध्ये दुईजना निर्णायकको निर्णय अनुसार मारिएको चौपाया- अनुरूपको एउटा चौपाया हुनेछ, (जसलाई) का"बासम्म बलिदानस्वरूप पुऱ्याउनु पर्नेछ; अथवा त्यस कामको परिमार्जनस्वरूप (त्यस व्यक्तिले केही) दरिद्र व्यक्तिहरूलाई खाना ख्वाउनु (पर्नेछ), अथवा त्यस बराबरको दिनहरूमा उपवास बस्नु पर्नेछ । ताकि त्यस व्यक्तिले आफ्नो कर्मको दण्ड(को स्वाद) चाखोस् । अतीतमा जे भया -त्यसप्रति) अल्लाहले क्षमादान गरेका छन्; परन्तु जसले पुनः त्यो कार्य गर्छ, अल्लाहले त्यसलाई

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا لَا تَقْتُلُوا الصَّيْدَ وَاَنْتُمْ حُرُمٌ ۗ وَمَنْ قَتَلَهٗ مِنْكُمْ مُّتَعَمِّدًا فَجَزَآءٌ مِّثْلُ مَا قَتَلَ مِنَ النَّعَمِ يَحْكُمُ بِهٖ ذَوَا عَدْلٍ مِّنْكُمْ هَدْيًا ۢ بٰلِغَ الْكَعْبَةِ اَوْ كَفَّارَةٌ طَعَامُ مَسٰكِيْنَ اَوْ عَدْلُ ذٰلِكَ صِيَامًا لِّيَذُوْقَ وَبَالَ اَمْرِهٖ ۗ عَفَا اللّٰهُ عَمَّا سَلَفَ ۗ وَمَنْ عَادَ فَيَنْتَقِمُ اللّٰهُ مِنْهُ ۗ وَاللّٰهُ عَزِيْزٌ ذُو انْتِقَامٍ ﴿٩٥﴾

त्यसको अपराधको लागि) दण्ड दिनेछन् । तथा अल्लाह परम शक्तिशाली, प्रतिशोधकारी छन् ।

أُحِلَّ لَكُمْ صَيْدُ الْبَحْرِ وَطَعَامُهُ مَتَاعًا لَّكُمْ وَلِلسَّيَّارَةِ ۚ وَحُرِّمَ عَلَيْكُمْ صَيْدُ الْبَرِّ مَا دُمْتُمْ حُرُمًا ۚ وَاتَّقُوا اللَّهَ الَّذِي إِلَيْهِ تُحْشَرُونَ ﴿٩٦﴾

९७. समुद्री शिकार गर्नु र त्यसलाई खानु तिमीहरूका निम्ति तथा यात्रीहरूका निम्ति लाभस्वरूप वैध गरिएको छ । परन्तु जबसम्म तिमीहरू तीर्थवासका (हजका) अवस्थामा रहन्छौ तबसम्म तिमीहरूप्रति जमिनको शिकार भने अवैध ठहऱ्याइएको छ । तथा अल्लाहसित डराऊ जससमक्ष तिमीहरूलाई एकत्रित गरिनेछ ।

جَعَلَ اللَّهُ الْكَعْبَةَ الْبَيْتَ الْحَرَامَ قِيَامًا لِّلنَّاسِ وَالشَّهْرَ الْحَرَامَ وَالْهَدْيَ وَالْقَلَائِدَ ۚ ذَٰلِكَ لِتَعْلَمُوا أَنَّ اللَّهَ يَعْلَمُ مَا فِي السَّمَاوَاتِ وَمَا فِي الْأَرْضِ وَأَنَّ اللَّهَ بِكُلِّ شَيْءٍ عَلِيمٌ ﴿٩٧﴾

९८. अल्लाहले पवित्र घर (अर्थात्) का"बालाई त्यस्तै पवित्र महिना तथा बलिदानलाई मानिसहरूका निम्ति सहयोग र उन्नतिका साधनस्वरूप बनाएका छन्, तथा घाँटीमा माला (पहिऱ्याइएका जन्तुहरू)लाई पनि । यसको कारण के हो भने आकाशमण्डल र पृथ्वीमा के छ भन्ने कुरा अल्लाहलाई थाहा छ तथा सम्पूर्ण वस्तुहरूप्रति अल्लाह पूर्णविदित रहेका छन् भनी तिमीहरू जान्न सक ।

اعْلَمُوا أَنَّ اللَّهَ شَدِيدُ الْعِقَابِ وَأَنَّ اللَّهَ غَفُورٌ رَّحِيمٌ ﴿٩٨﴾

९९. अल्लाह सजाय दिनमा कठोर छन् तथा परम क्षमाशील, परम दानशील (पनि) छन् भनी जान ।

مَا عَلَى الرَّسُولِ إِلَّا الْبَلَاغُ ۚ وَاللَّهُ يَعْلَمُ مَا تُبْدُونَ وَمَا تَكْتُمُونَ ﴿٩٩﴾

१००. सन्देशवाहकका जिम्मामा केवल सन्देश पुऱ्याउने कार्य रहेको छ । तथा के कुरा तिमीहरू प्रकट गर्छौ र के कुरा गोप्य राख्छौ भन्ने अल्लाहलाई थाहा छ ।

قُل لَّا يَسْتَوِي الْخَبِيثُ وَالطَّيِّبُ وَلَوْ أَعْجَبَكَ كَثْرَةُ الْخَبِيثِ ۚ فَاتَّقُوا اللَّهَ يَا أُولِي الْأَلْبَابِ لَعَلَّكُمْ تُفْلِحُونَ ﴿١٠٠﴾

१०१. तिमी भन, "खराब र असल कुरा एक समान हुन सक्दैनन्, चाहे तिमीहरूलाई खराब वस्तुहरूको प्रचुरता कति नै प्रिय किन नहोस् । अतः हे बुद्धिमान मानिस् हो ! अल्लाहसित डराऊ,

ताकि तिमीहरू कृतकार्य हुन सक ।

१०२. हे विश्वासीजन हो ! यस्ता कुराहरूबारे प्रश्न नगर जुन कुराहरू यदि तिमीहरूप्रति प्रकट गरिएमा तिमीहरूमाथि सङ्कटका कारण बनून् । परन्तु यदि तिमीहरूले कुरान अवतीर्ण गरिँदै गर्दा तिनका सम्बन्धमा प्रश्न गऱ्यौ भने, तिमीहरूप्रति ती कुरालाई प्रकट गरिनेछ । अल्लाहले कृपापूर्वक तिनीहरू (को वर्णन) लाई परित्याग गरिदिएका छन् । तथा अल्लाह परम क्षमाशील, परम सहिष्णु छन्* ।

يَآيُّهَا الَّذِيْنَ اٰمَنُوْا لَا تَسْـَٔلُوْا عَنْ اَشْيَآءَ اِنْ تُبْدَ لَكُمْ تَسُؤْكُمْ ۚ وَاِنْ تَسْـَٔلُوْا عَنْهَا حِيْنَ يُنَزَّلُ الْقُرْاٰنُ تُبْدَ لَكُمْ ۚ عَفَا اللّٰهُ عَنْهَا ۚ وَاللّٰهُ غَفُوْرٌ حَلِيْمٌ ﴿١٠١﴾

१०३. तिमीहरूभन्दा अघि एउटा सम्प्रदायले यस्ता (कुराहरूबारे) प्रश्न गरेको थियो, (परन्तु) त्यसपश्चात् तिनका सम्बन्धमा तिनीहरू अविश्वासी हुनपुगे ।

قَدْ سَاَلَهَا قَوْمٌ مِّنْ قَبْلِكُمْ ثُمَّ اَصْبَحُوْا بِهَا كٰفِرِيْنَ ﴿١٠٢﴾

१०४. अल्लाहले कुनै "बहिरा" वा "साइबा" अथवा "वसिला" वा "हामे" बारे निर्देश दिएका छैनन्; परन्तु जुन व्यक्तिहरू अविश्वासी छन् तिनीहरू नै अल्लाहविरुद्ध मिथ्या गर्दछन्, तथा तिनीहरूमध्ये धेरैजसो व्यक्तिहरूले आफ्नो समझदारीको उपयोग गर्दैनन्** ।

مَا جَعَلَ اللّٰهُ مِنْۢ بَحِيْرَةٍ وَّلَا سَآئِبَةٍ وَّلَا وَصِيْلَةٍ وَّلَا حَامٍ ۙ وَّلٰكِنَّ الَّذِيْنَ كَفَرُوْا يَفْتَرُوْنَ عَلَى اللّٰهِ الْكَذِبَ ۗ وَاَكْثَرُهُمْ لَا يَعْقِلُوْنَ ﴿١٠٣﴾

---

* विश्वासीजनका निम्ति अल्लाहद्वारा निर्धारित गरिएको कार्यसूचीमा तिनीहरूलाई सङ्कटमा पार्ने उद्देश्य हुन सक्दैन । त्यसोपरान्त केही कुराहरूको अनुसरणमा तिनीहरूलाई कठिनाई पर्ला र अनावश्यक बेचैनीको कारण बन्न पुग्ला भनी आफ्नो अथाह करुणाकै कारण अल्लाह अत्याधिक विस्तारित आदेश दिन रुचाउँदैनन् ।

** टिप्पणी : 'बहिरा' ( بَحِيْرَة ) मूर्तिपूजक अरबीहरूले राखेको यस्तो एउटा उँटनीको नाम हो जसले सातवटा बच्चाहरू जन्माएपछि त्यसका कान चिरेर त्यसलाई खुल्ला चर्न र खान छाडिन्थ्यो– त्यो केही देवताहरूको नाममा चढाइएको हुनाले

وَإِذَا قِيْلَ لَهُمْ تَعَالَوْا إِلٰى مَآ أَنْزَلَ اللّٰهُ وَإِلَى الرَّسُوْلِ قَالُوْا حَسْبُنَا مَا وَجَدْنَا عَلَيْهِ اٰبَآءَنَا ۚ أَوَلَوْ كَانَ اٰبَآؤُهُمْ لَا يَعْلَمُوْنَ شَيْئًا وَّلَا يَهْتَدُوْنَ ﴿١٠٤﴾

१०५. तथा जब तिनीहरूलाई "जुन कुरा अल्लाहले अवतीर्ण गरेका छन्, त्यसतर्फ र सन्देशवाहकतर्फ आऊ", भनी भनिन्छ तब तिनीहरू भन्छन् "जहाँ हामीले आफ्ना पुर्खालाई पाएका छौं त्यही नै हाम्रा निम्ति पर्याप्त रहेको छ ।" त्यसो पो ! के तिनीहरूका पूर्खामा ज्ञान र मार्गदर्शन भन्ने कुरा थिएन भने पनि?

يٰٓأَيُّهَا الَّذِيْنَ اٰمَنُوْا عَلَيْكُمْ أَنْفُسَكُمْ ۚ لَا يَضُرُّكُمْ مَّنْ ضَلَّ إِذَا اهْتَدَيْتُمْ ۚ إِلَى اللّٰهِ مَرْجِعُكُمْ جَمِيْعًا فَيُنَبِّئُكُمْ بِمَا كُنْتُمْ تَعْمَلُوْنَ ﴿١٠٥﴾

१०६. हे विश्वासीजन हो ! आफ्नो निगरानी (प्रतिरक्षा) गर । तिमीहरू स्वयम्) सन्मार्गमा रहेमा कुनै पथभ्रष्ट व्यक्तिले तिमीहरूको केही हानि गर्न सक्दैन । तिमीहरू सबैले अल्लाहतर्फ नै फर्केर जानु छ" तब तिमीहरूले गर्ने

---

त्यसको दुध प्रयोग गरिँदैनथ्यो, न त त्यसको सवारी (गरिन्थ्यो) ।

'साइबा' (سائبة) यस्तो उँटनी जसलाई पाँचवटा बच्चाहरू जन्माएपछि पानी पिउन र चर्न खुल्ला छाडिन्थ्यो । वसिला: ( وصيلة ) एउटा यस्तो पोथी उँट (वा भेडी वा बाखो जसलाई त्यसले लगातार सातवटा पोथी बच्चा (पाठी) जन्माए पश्चात देउताको नाममा खुल्ला छाडिन्थ्यो । यदि सातौं बेतमा त्यसले भाले-पोथी जोडी नै ब्याएमा, तिनीहरूलाई समेत खुल्ला छाडिन्थ्यो । 'हामे'(حام) एउटा यस्तो उँट जुन सातवटा बच्चाहरूको पिता बनिसकेको हुनाले त्यसलाई खुल्ला छाडिन्थ्यो र त्यसलाई सवारी र बोझ लाद्ने कार्यमा प्रयोग गरिँदैन्थ्यो, त्यसलाई चर्न र पानी पिउन खुल्ला छाडिन्थ्यो । यी साधारण कुराहरूको वर्णनपछि विस्तृत नीतिनिर्माण कार्य मानिसलाई उसले आफ्नो यथोचित विचारधारानुसार गर्न सुम्पदै उक्त आयतले कुन सत्यतर्फ यथेष्ट ध्यानाकर्षण गर्छ भने त्यसप्रकारको स्वाधीनता र स्वेच्छाचारिताको अनुमति मौलिक अधिकारको रूपमा मिल्न सक्दैन, किनभने मौलिक विधानमा एकमत (निर्विरोधिता) अत्यावश्यक हुन्छ तथा त्यसमा मतभिन्नता अति हानिकारक सिद्ध हुन्छ । मौलिक सिद्धान्तहरूको गठनकार्यमा मानिसको बुद्धिमाथि पूर्ण भरोसा गर्न सकिँदैन भन्ने कुरा स्पष्ट पार्न उक्त आयतले एउटा उदाहरण प्रस्तुत गर्छ । अरबीहरू उक्त आयतमा उल्लेखित जन्तुहरूलाई आफ्ना मूर्तिहरूको श्रद्धास्वरूप खुल्ला छाड्ने गर्थे । त्यो (आचरण) अविश्वास र अन्धविश्वासमा आधारित हुनका साथै अति मूर्खतापूर्ण पनि थियो । त्यस्ता खुल्ला छाडिएका जनावरहरू जहाँजहाँ जान्थे ठूलो क्षति पुऱ्याउँथे । पवित्र कुरानले त्यस दुराचरणलाई मानिसले बनाएको सिद्धान्त (विधान) को उदाहरणस्वरूप प्रस्तुत गर्दै अल्लाहद्वारा अवतरित (आकाशीय) विधानमाथि प्रश्न गर्ने इसाईहरूलाई त्यस्ता नैतिकघाती आचारणहरूबाट शिक्षा ग्रहण गर्ने चेतावनी दिन्छ, जसमा मूर्तिपूजक अरबीहरूले आश्रय लिएका थिए, किनभने तिनीहरूको मार्ग देखाउने कुनै अल्लाहीय विधान तिनीहरूलाई प्राप्त थिएन ।

गरेका कार्यहरूप्रति उनले तिमीहरूलाई अवगत गराउनेछन् ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا شَهَادَةُ بَيْنِكُمْ اِذَا حَضَرَ اَحَدَكُمُ الْمَوْتُ حِيْنَ الْوَصِيَّةِ اثْنٰنِ ذَوَا عَدْلٍ مِّنْكُمْ اَوْ اٰخَرٰنِ مِنْ غَيْرِكُمْ اِنْ اَنْتُمْ ضَرَبْتُمْ فِي الْاَرْضِ فَاَصَابَتْكُمْ مُّصِيْبَةُ الْمَوْتِ ؕ تَحْبِسُوْنَهُمَا مِنْ بَعْدِ الصَّلٰوةِ فَيُقْسِمٰنِ بِاللّٰهِ اِنِ ارْتَبْتُمْ لَا نَشْتَرِيْ بِهٖ ثَمَنًا وَّلَوْ كَانَ ذَا قُرْبٰى ۙ وَلَا نَكْتُمُ شَهَادَةَ اللّٰهِ اِنَّاۤ اِذًا لَّمِنَ الْاٰثِمِيْنَ ﴿١٠٦﴾

१०७. हे विश्वासीजन हो ! जब तिमीहरूमध्ये कसैको मृत्यु निकट आउँछ तब वसियतनामा तयार गर्दा तिमीहरूमध्ये दुईजना न्यायशील व्यक्तिहरूलाई साक्षी राख्नाले तिमीहरूबीचको साक्षीकरण (न्यायोचित) हुनेछ । अथवा यदि तिमीहरू देशमा यात्रावस्थामा रहेमा र तिमीहरूमाथि मृत्युसङ्कट आइलागेमा तिमीहरूभन्दा बाहिरका दुईजना व्यक्तिहरूलाई । तिनीहरू दुबैलाई उपासना (नमाज)पश्चात् (साक्षी दिनका निम्ति) रोकेर राख; यदि तिमीहरूलाई सन्देह रहेमा, तिनीहरू दुबैले अल्लाहको शपथ खाएर के भनून् भने, "हामी यसका बदलामा कुनै मूल्य लिनेछैनौं चाहे त्यो निकटसम्बन्धी नै किन नहोस्, तथा हामी अल्लाहद्वारा (निर्देशित) साक्षीलाई लुकाउने छैनौं; यदि त्यसो गरेमा हामी निश्चय नै पापी व्यक्तिहरूमा परिणत हुनेछौं ।

فَاِنْ عُثِرَ عَلٰۤى اَنَّهُمَا اسْتَحَقَّاۤ اِثْمًا فَاٰخَرٰنِ يَقُوْمٰنِ مَقَامَهُمَا مِنَ الَّذِيْنَ اسْتَحَقَّ عَلَيْهِمُ الْاَوْلَيٰنِ فَيُقْسِمٰنِ بِاللّٰهِ لَشَهَادَتُنَاۤ اَحَقُّ مِنْ شَهَادَتِهِمَا وَمَا اعْتَدَيْنَاۤ ۖ اِنَّاۤ اِذًا لَّمِنَ الظّٰلِمِيْنَ ﴿١٠٧﴾

१०८. परन्तु यदि तिनीहरूले (मिथ्या शपथ) को पाप गरेका छन् भन्ने प्रमाणित भएमा जुन व्यक्तिहरूका विपक्षमा तिनीहरूले साक्षी दिएका थिए तिनीहरूमध्येका अन्य दुईजना व्यक्तिहरूले उनीहरूको स्थान लिऊन् । त्यसपछि तिनीहरूले अल्लाहको (नामको) शपथ खाएर पहिलाका दुईजनाविरुद्ध के भनी दृढतापूर्वक साक्षी दिऊन् भने, "पहिलाका दुईजनाको साक्षीभन्दा हाम्रो साक्षी अधिक सत्य रहेको छ तथा हामीले सीमोल्लङ्घन गरेकाछैनौं । यदि हामीहरू झुठ्ठा रहेमा (अल्लाहका दृष्टिमा) हाम्रो गणना

सीमोल्लङ्घनकारी मध्ये हुनेछ* ।

ذٰلِكَ اَدْنٰۤى اَنْ يَّاْتُوْا بِالشَّهَادَةِ عَلٰى وَجْهِهَاۤ اَوْ يَخَافُوْۤا اَنْ تُرَدَّ اَيْمَانٌۢ بَعْدَ اَيْمَانِهِمْ ۗ وَاتَّقُوا اللّٰهَ وَاسْمَعُوْا ۗ وَاللّٰهُ لَا يَهْدِى الْقَوْمَ الْفٰسِقِيْنَ ﴿١٠٨﴾

१०९. यस प्रकार तिनीहरूको साक्षीपछि अन्य साक्षीहरू पनि ध्यानमा रहनेछन् भन्ने डरले तिनीहरू आफ्नो साक्षीप्रति यथार्थ रहनु (पर्छ भन्ने एउटा दबाउ तिनीहरूमाथि पर्ने) अधिक सम्भावना रहेको छ । तथा अल्लाहसित डराऊ र ध्यानपूर्वक सुन । तथा अल्लाहले अवज्ञाकारी व्यक्तिहरूलाई मार्गप्रदर्शन गर्दैनन् ।

يَوْمَ يَجْمَعُ اللّٰهُ الرُّسُلَ فَيَقُوْلُ مَاذَاۤ اُجِبْتُمْ ۗ قَالُوْا لَا عِلْمَ لَنَا ۗ اِنَّكَ اَنْتَ عَلَّامُ الْغُيُوْبِ ﴿١٠٩﴾

११०. त्यस दिनको (स्मरण गर) जब अल्लाहले सन्देशवाहकहरूलाई एकत्रित गरी "तिमीहरूलाई के जवाफ दिइएको थियो भनी सोध्नेछन् । तब तिनीहरूले भन्नेछन्, "हामीलाई त्यसबारे ज्ञान छैन, केवल तिमी नै हौ जो गोप्य कुराहरूका सर्वश्रेष्ठ ज्ञाता रहेका छौ ।

اِذْ قَالَ اللّٰهُ يٰعِيْسَى ابْنَ مَرْيَمَ اذْكُرْ نِعْمَتِيْ عَلَيْكَ وَعَلٰى وَالِدَتِكَ ۘ اِذْ اَيَّدْتُّكَ بِرُوْحِ الْقُدُسِ ۗ تُكَلِّمُ النَّاسَ فِى الْمَهْدِ وَكَهْلًا ۚ وَاِذْ عَلَّمْتُكَ الْكِتٰبَ وَالْحِكْمَةَ وَالتَّوْرٰىةَ وَالْاِنْجِيْلَ ۚ وَاِذْ تَخْلُقُ مِنَ الطِّيْنِ كَهَيْـَٔةِ الطَّيْرِ بِاِذْنِيْ فَتَنْفُخُ فِيْهَا فَتَكُوْنُ طَيْرًاۢ بِاِذْنِيْ

१११. जब अल्लाहले भन्नेछन्- "हे मरियमपुत्र ईसा, तिमीप्रति र तिम्री माताप्रति मैले गरेको अनुग्रहलाई स्मरण गर; जब मैले पवित्र आत्माद्वारा तिमीलाई शक्तिसम्पन्न तुल्याएको थिएँ (फलस्वरूप) तिमी कोक्रामा (बाल्यावस्थामा) र मध्यमवयस्क** अवस्थामा मानिसहरूसँग

* टिप्पणी : उक्त आयतले उपस्थित गरिने सम्पूर्ण प्रकारका साक्षीहरूको चित्राङ्कन गर्छ तथा साक्षी (दिन) का निम्ति घनिष्टसम्बन्धी पहिला दुईजना व्यक्तिहरूलाई प्राथमिकता दिइएको छ । यो कुरो यो भन्दा पहिलाको आयत नं. १०७ बाट स्पष्ट हुन्छ ।

** उक्त अभिव्यक्तिले ईसाले आफ्नो प्रारम्भिक बाल्यकालदेखि नै तत्वज्ञानपूर्ण तथा अलौकिक वाणीहरू प्रकट गर्ने (बोल्ने) गर्थे तथा त्यो कार्य उनले आफ्नो प्रौढ उमेरसम्म निरन्तररूपमा गर्दै गएका थिए भन्ने कुराको सङ्केत दिन्छ । 'कह्लान्' ( كَهْلًا ) शब्दले एउटा व्यक्तिको कपाल फुस्रो हुन लागेको उमेरदेखि लिएर बुढेशकालसम्मलाई बुझाउँछ ।

उक्त आयत अल्लाहका नबीद्वारा ल्याइएको आध्यात्मिक आन्दोलनको एउटा

वार्ता गर्ने गर्थ्यौ; तथा जब मैले तिमीलाई पुस्तक र तत्त्वज्ञान तथा तौरात र इन्जिल (Gospel) सिकाएको थिएँ; तथा जब तिमी मेरो आदेशले गिलो माटोद्वारा पक्षीसदृश एउटा प्राणी सिर्जना गर्थ्यौ र तिमी त्यसमा (नयाँ प्राण) फुक्थ्यौ र त्यो मेरो आदेशले एउटा उड्ने प्राणी बन्थ्यो; तथा तिमी मेरो आदेशले अन्धा र कुष्ठारोगीहरूलाई स्वस्थ तुल्याउँथ्यौ; तथा जब तिमी मेरा आदेशले मृतकहरूलाई उठाउँथ्यौ; (ब्यूँताउँथ्यौ) तथा जब तिमी तिनीहरूसमक्ष स्पष्ट चिह्नहरूका साथ आएका थियौ तब हामीले इजरायलका सन्तानलाई तिम्रो (हत्या गर्न)बाट रोकेका थियौं; तथा तिनीहरूमध्ये अविश्वासी व्यक्तिहरूले "यी त पूर्णरूपले छल-कपटपूर्ण कुराहरू हुन्" भनी भनेकाथिए ।"

وَتُبْرِئُ الْأَكْمَهَ وَالْأَبْرَصَ بِإِذْنِي ۖ وَإِذْ تُخْرِجُ الْمَوْتَىٰ بِإِذْنِي ۖ وَإِذْ كَفَفْتُ بَنِي إِسْرَائِيلَ عَنْكَ إِذْ جِئْتَهُمْ بِالْبَيِّنَاتِ فَقَالَ الَّذِينَ كَفَرُوا مِنْهُمْ إِنْ هَٰذَا إِلَّا سِحْرٌ مُبِينٌ ﴿١١٠﴾

११२. तथा जब मैले (ईसाका) शिष्यहरूलाई मप्रति र मेरा सन्देशवाहकप्रति विश्वास स्थापना गर्न प्रेरित गरें, तब तिनीहरूले भने, "हामी विश्वास स्थापना गर्छौं तथा हामी आज्ञाकारी भयौं भनी तिमी साक्षी बस ।"

وَإِذْ أَوْحَيْتُ إِلَى الْحَوَارِيِّينَ أَنْ آمِنُوا بِي وَبِرَسُولِي قَالُوا آمَنَّا وَاشْهَدْ بِأَنَّنَا مُسْلِمُونَ ﴿١١١﴾

११३. जब शिष्यहरूले भने, "हे मरियमपुत्र इसा, के हाम्रा निम्ति आकाशबाट टेबुलभरी खाद्यवस्तु अवतीर्ण गर्न तिम्रा प्रतिपालक सक्षम छन् ?" उनले भने, "यदि तिमीहरू विश्वासी हौ भने अल्लाहसित डराऊ ।"

إِذْ قَالَ الْحَوَارِيُّونَ يَا عِيسَى ابْنَ مَرْيَمَ هَلْ يَسْتَطِيعُ رَبُّكَ أَنْ يُنَزِّلَ عَلَيْنَا مَائِدَةً مِنَ السَّمَاءِ ۖ قَالَ اتَّقُوا اللَّهَ إِنْ كُنْتُمْ مُؤْمِنِينَ ﴿١١٢﴾

११४. तिनीहरूले भने, "हामी त्यसबाट खान पाउँ भन्ने चाहन्छौं तथा हाम्रो दृहय

قَالُوا نُرِيدُ أَنْ نَأْكُلَ مِنْهَا وَتَطْمَئِنَّ قُلُوبُنَا وَنَعْلَمَ أَنْ قَدْ صَدَقْتَنَا وَ

---

रूपकात्मक अभिव्यक्ति हो । त्यो ईसाका गुणहरूमा (थपिएको) एउटा विशेष उपहार हो जसलाई अल्लाहका सम्पूर्ण नबीहरूमध्येबाट त्यस प्रकारका अलौकिक विलक्षण) आन्दोलन ल्याउनका निम्ति निर्वाचित गरिएको थियो ।

تَكُونَ عَلَيْهَا مِنَ الشَّٰهِدِينَ ﴿١١٣﴾

निश्चिन्त होस् र तिमीले हामीसँग सत्यकुरा गरेका छौ भनी हामी जान्न सकौं, तथा त्यसबारे हामी पनि साक्षी दिन सकौं ।"

قَالَ عِيسَى ابْنُ مَرْيَمَ اللَّهُمَّ رَبَّنَا أَنزِلْ عَلَيْنَا مَائِدَةً مِّنَ السَّمَاءِ تَكُونُ لَنَا عِيدًا لِّأَوَّلِنَا وَآخِرِنَا وَآيَةً مِّنكَ ۖ وَارْزُقْنَا وَأَنتَ خَيْرُ الرَّازِقِينَ ﴿١١٤﴾

११५. मरियमपुत्र ईसाले भने, "हे हाम्रा प्रतिपालक, अल्लाह, आकाशबाट हाम्रा निम्ति एउटा खाद्यान्नले पूण टेबुल अवतीर्ण गर ताकि हामीमध्ये पहिला तथापछिका व्यक्तिहरूका निम्ति त्यो पर्वस्वरूप होस् तथा तिम्रातर्फबाट एउटा चिह्नस्वरूप; तथा हाम्रा निम्ति जीवनवृत्ति प्रदान गर, कारण तिमी नै सर्वोत्तम जीविका प्रदानकर्ता हौ ।"

قَالَ اللَّهُ إِنِّي مُنَزِّلُهَا عَلَيْكُمْ ۖ فَمَن يَكْفُرْ بَعْدُ مِنكُمْ فَإِنِّي أُعَذِّبُهُ عَذَابًا لَّا أُعَذِّبُهُ أَحَدًا مِّنَ الْعَالَمِينَ ﴿١١٥﴾

११६. अल्लाहले भने, "म अवश्य तिमीहरूप्रति त्यो अवतीर्ण गर्नेछु, परन्तु त्यसपछि तिमीहरूमध्ये जसले अविश्वास गर्नेछन्- म तिनीहरूलाई निश्चय नै यस्तो दण्ड दिनेछु जुन दण्ड म अन्य कुनै व्यक्तिहरूलाई दिनेछैन ।"

وَإِذْ قَالَ اللَّهُ يَا عِيسَى ابْنَ مَرْيَمَ أَأَنتَ قُلْتَ لِلنَّاسِ اتَّخِذُونِي وَأُمِّيَ إِلَٰهَيْنِ مِن دُونِ اللَّهِ ۖ قَالَ سُبْحَانَكَ مَا يَكُونُ لِي أَنْ أَقُولَ مَا لَيْسَ لِي بِحَقٍّ ۚ إِن كُنتُ قُلْتُهُ فَقَدْ عَلِمْتَهُ ۚ تَعْلَمُ مَا فِي نَفْسِي وَلَا أَعْلَمُ مَا فِي نَفْسِكَ ۚ إِنَّكَ أَنتَ عَلَّامُ الْغُيُوبِ ﴿١١٦﴾

११७. तथा जब अल्लाहले भन्नेछन्, "हे मरियमपुत्र ईसा, के तिमीले मानिसहरूलाई "अल्लाहलाई छाडी मलाई र मेरी मातालाई दुई उपास्य मान" भनी भनेका थियौ?" उनले उत्तर दिनेछन्, "तिमी पवित्र छौ । जुन कुरो भन्ने अधिकार मलाई प्राप्त थिएन त्यो कुरा म कदापि गर्न सक्दैनथे । यदि मैले त्यसो भनेको भए, तिमीलाई अवश्य थाहा लाग्ने थियो । जुन कुरा मेरो मनमा रहेको छ तिमी त्यसलाई जान्दछौ, तथा जुन कुरा तिम्रा मनमा रहेको छ त्यसलाई म जान्दिन । केवल तिमी नै हौ जसलाई गोप्य कुराहरूको पूर्णज्ञान रहेको छ ।

مَا قُلْتُ لَهُمْ إِلَّا مَا أَمَرْتَنِي بِهِ أَنِ

११८. "मैले तिनीहरूसित केही भनेको

اعْبُدُوا اللّٰهَ رَبِّيْ وَرَبَّكُمْ ۚ وَكُنْتُ عَلَيْهِمْ شَهِيْدًا مَّا دُمْتُ فِيْهِمْ ۚ فَلَمَّا تَوَفَّيْتَنِيْ كُنْتَ اَنْتَ الرَّقِيْبَ عَلَيْهِمْ ۚ وَاَنْتَ عَلٰى كُلِّ شَيْءٍ شَهِيْدٌ ﴿١١٨﴾

थिइँन परन्तु त्यही जसको आदेश तिमीले मलाई दिएका थियौ अर्थात्, "अल्लाहको उपासना गर । जो मेरा प्रतिपालक र तिमीहरूका प्रतिपालक हुन् ।" जबसम्म म तिनीहरूसँग थिएँ तबसम्म म तिनीहरूप्रति साक्षी थिएँ, परन्तु जब तिमीले मलाई मृत्यु प्रदान गऱ्यौ, त्यसपछि तिमी नै तिनीहरूका निरीक्षक रहेका छौं, तथा सम्पूर्ण वस्तुहरूप्रति तिमी नै साक्षी रहेका छौ ।

اِنْ تُعَذِّبْهُمْ فَاِنَّهُمْ عِبَادُكَ ۚ وَاِنْ تَغْفِرْ لَهُمْ فَاِنَّكَ اَنْتَ الْعَزِيْزُ الْحَكِيْمُ ﴿١١٩﴾

११९. "यदि तिमीले तिनीहरूलाई दण्ड दिन्छौ भने तिनीहरू तिम्रै सेवक हुन्; तथा यदि तिमीले तिनीहरूलाई क्षमादान गर्छौ भने, निश्चय नै तिमी परम क्षमताशील, तत्त्वज्ञ छौ ।"

قَالَ اللّٰهُ هٰذَا يَوْمُ يَنْفَعُ الصّٰدِقِيْنَ صِدْقُهُمْ ۗ لَهُمْ جَنّٰتٌ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ خٰلِدِيْنَ فِيْهَآ اَبَدًا ۗ رَضِيَ اللّٰهُ عَنْهُمْ وَرَضُوْا عَنْهُ ۗ ذٰلِكَ الْفَوْزُ الْعَظِيْمُ ﴿١٢٠﴾

१२०. अल्लाहले भन्नेछन्, "यो दिन यस्तो रहेको छ जसमा (केवल) सत्यनिष्ठ व्यक्तिहरूले आफ्नो सत्यनिष्ठताको लाभ उठाउने छन् । तिनीहरूका निम्ति यस्ता बगैंचाहरू रहेका छन् जसमनि नहरहरू बगदछन्; त्यहाँ तिनीहरू सदा बसोबास गर्नेछन् । अल्लाह तिनीहरूसित अति प्रसन्न भएका छन्, तथा तिनीहरू उनीदेखि पूर्णरूपले प्रसन्न भएका छन्; अवश्य नै त्यो एउटा ठूलो कृतकार्यता हो ।"

لِلّٰهِ مُلْكُ السَّمٰوٰتِ وَالْاَرْضِ وَمَا فِيْهِنَّ ۗ وَهُوَ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ﴿١٢١﴾ ع ١٦/٥

१२१. आकाशमण्डल र पृथ्वी तथा त्यहाँ रहेका सम्पूर्ण वस्तुहरूप्रति अल्लाहको शासनाधिकार रहेको छ; तथा सम्पूर्ण वस्तुहरूमाथि उनको शक्ति कायम छ ।

●

سُوْرَةُ الْاَنْعَامِ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ مِائَةٌ وَّسِتٌّ وَّسِتُّوْنَ اٰيَةً وَّعِشْرُوْنَ رُكُوْعًا

## अल्-अना'म
(हिजरतअघि अवतरित)

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

२. सम्पूर्ण प्रशंसाका स्वामी ती अल्लाह हुन् जसले आकाशमण्डल र पृथ्वीको सिर्जना गरे तथा सबै (प्रकारका) अन्धकार र प्रकाश उत्पन्न गरे; तथापि अविश्वासी व्यक्तिहरू आफ्ना प्रतिपालकका भागीदार निर्माण गर्छन् ।

اَلْحَمْدُ لِلّٰهِ الَّذِيْ خَلَقَ السَّمٰوٰتِ وَ الْاَرْضَ وَ جَعَلَ الظُّلُمٰتِ وَ النُّوْرَ ۬ ثُمَّ الَّذِيْنَ كَفَرُوْا بِرَبِّهِمْ يَعْدِلُوْنَ ②

३. ती उनीनै हुन् जसले तिमीहरूलाई गिलो माटोद्वारा सृष्टि गरे, त्यसपश्चात् उनले एउटा म्याद निर्धारण गरे । तथा एउटा (अन्य) म्याद उनीसँग सम्बन्धित छ । तथापि तिमीहरू सन्देह गर्ने गर्छौ ।

هُوَ الَّذِيْ خَلَقَكُمْ مِّنْ طِيْنٍ ثُمَّ قَضٰۤى اَجَلًا ؕ وَ اَجَلٌ مُّسَمًّى عِنْدَهٗ ثُمَّ اَنْتُمْ تَمْتَرُوْنَ ③

४. तथा आकाशमण्डल र पृथ्वी (दुबै) मा तिनै -परमेश्वर) अल्लाह रहेका छन् । उनले तिमीहरूका गोपनीय र प्रकाश्य (कुराहरू) जान्दछन् । तथा जे वस्तु तिमीहरू आर्जन गर्छौ त्यसलाई उनी जान्दछन् ।

وَ هُوَ اللّٰهُ فِي السَّمٰوٰتِ وَ فِي الْاَرْضِ ؕ يَعْلَمُ سِرَّكُمْ وَ جَهْرَكُمْ وَ يَعْلَمُ مَا تَكْسِبُوْنَ ④

५. तथा तिनीहरूसमक्ष तिनीहरूका प्रतिपालकका चिह्नहरूमध्ये कुनै यस्तो चिह्नको आगमन भएको छैन जसबाट तिनीहरू विमुख भएका नहुन् ।

وَ مَا تَاْتِيْهِمْ مِّنْ اٰيَةٍ مِّنْ اٰيٰتِ رَبِّهِمْ اِلَّا كَانُوْا عَنْهَا مُعْرِضِيْنَ ⑤

६. अतः जब तिनीहरूसमक्ष सत्यको आगमन भयो तिनीहरूले त्यसलाई अस्वीकार गरे; परन्तु जसबारे तिनीहरू ठट्टा गर्ने गर्थे चाँडै नै त्यसको सूचना तिनीहरूलाई प्राप्त हुनेछ ।

فَقَدْ كَذَّبُوْا بِالْحَقِّ لَمَّا جَآءَهُمْ ؕ فَسَوْفَ يَاْتِيْهِمْ اَنْۢبٰٓؤُا مَا كَانُوْا بِهٖ يَسْتَهْزِءُوْنَ ⑥

أَلَمْ يَرَوْا كَمْ أَهْلَكْنَا مِنْ قَبْلِهِمْ مِّنْ قَرْنٍ مَّكَّنّٰهُمْ فِي الْأَرْضِ مَا لَمْ نُمَكِّنْ لَّكُمْ وَأَرْسَلْنَا السَّمَاءَ عَلَيْهِمْ مِّدْرَارًا ۖ وَّجَعَلْنَا الْأَنْهٰرَ تَجْرِي مِنْ تَحْتِهِمْ فَأَهْلَكْنٰهُمْ بِذُنُوْبِهِمْ وَأَنْشَأْنَا مِنْۢ بَعْدِهِمْ قَرْنًا اٰخَرِيْنَ ⑥

७. तिनीहरूभन्दा अघि कति पुस्ता (युग)हरू हामीले ध्वंस गरिसकेका छौं भन्ने कुरा तिनीहरूले दृष्टिगत गरेका छैनन् त? तिनीहरूलाई हामीले पृथ्वीमा यति शक्ति सम्पन्न तुल्याएका थियौं जति शक्तिसम्पन्न हामीले तिमीहरूलाई तुल्याएका छैनौं, तथा हामीले तिनीहरूमाथि अत्याधिक वर्षायुक्त बादल पठाएका थियौं तथा हामीले तिनीहरू मनि भएर बग्ने नहरहरू बगाएका थियौं; त्यसपश्चात् तिनीहरूका पापका कारण हामीले तिनीहरूलाई ध्वंस पार्‍यौं तथा तिनीहरूपश्चात् हामीले एउटा अर्को जातिलाई हुर्कायौं ।

وَلَوْ نَزَّلْنَا عَلَيْكَ كِتٰبًا فِي قِرْطَاسٍ فَلَمَسُوْهُ بِأَيْدِيْهِمْ لَقَالَ الَّذِيْنَ كَفَرُوْا إِنْ هٰذَا إِلَّا سِحْرٌ مُّبِيْنٌ ⑦

८. तथा यदि हामीले तिमीप्रति एउटा चर्ममा लिखित लेख अवतीर्ण गरेका भए र तिनीहरूले त्यसलाई आफ्नै हातले स्पर्श गरेका भए (तापनि) अविश्वासीहरुले निश्चय नै, “यो त एउटा खुल्लामखुल्ला टुना-मुना बाहेक केही होइन” भनी भन्ने थिए ।

وَقَالُوْا لَوْلَا أُنْزِلَ عَلَيْهِ مَلَكٌ ۖ وَلَوْ أَنْزَلْنَا مَلَكًا لَّقُضِيَ الْأَمْرُ ثُمَّ لَا يُنْظَرُوْنَ ⑧

९. तथा तिनीहरू भन्छन्, “त्यसप्रति किन कोही फरिस्ता अवतीर्ण गरिएन?” परन्तु यदि हामीले कुनै फरिस्ता अवतीर्ण गरेका भए त उक्त कुराको निर्णय नै भइहाल्थ्यो, (तथा) तिनीहरूलाई कुनै प्रकारको छुट (अवसर) दिइने थिएन ।

وَلَوْ جَعَلْنٰهُ مَلَكًا لَّجَعَلْنٰهُ رَجُلًا وَّلَلَبَسْنَا عَلَيْهِمْ مَّا يَلْبِسُوْنَ ⑨

१०. तथा यदि कुनै फरिस्तालाई हामीले (सन्देशवाहक स्वरूप) नियुक्त गर्थ्यौं भने त्यसलाई हामी मानिसका रूपमै (प्रकट) गर्ने थियौं; तथा त्यसपश्चात् जुन कुराबारे तिनीहरू (स्वयम्) अस्पष्ट छन् त्यसबारे हामी पनि तिनीहरूलाई अस्पष्टतामै राख्ने थियौं ।

وَلَقَدِ اسْتُهْزِئَ بِرُسُلٍ مِّنْ قَبْلِكَ فَحَاقَ

११. तथा तिमीभन्दा अघिका सन्देशवाहक हरूको (पनि) निश्चय नै खिल्ली उडाइएको

थियो, परन्तु जसबारे तिनीहरु खिल्ली उडाउँथे त्यसै (दण्ड)ले त्यसो गर्नेलाई घेऱ्यो।

بِالَّذِينَ سَخِرُوا مِنْهُمْ مَّا كَانُوا بِهِ يَسْتَهْزِءُونَ ١٠

१२. तिमी भन, "जगतमा घुमफिर गरेर हेर, जसले (नबी)हरूसँग मिथ्यावादी व्यक्तिहरूसरह व्यवहार गरेका थिए, ती व्यक्तिहरूको अन्त कस्तो भएको थियो ।

قُلْ سِيرُوا فِي الْأَرْضِ ثُمَّ انظُرُوا كَيْفَ كَانَ عَاقِبَةُ الْمُكَذِّبِينَ ١١

१३. तिमी भन, "आकाशमण्डल र पृथ्वमिा रहेका वस्तुहरू कसका हुन्" (तिमी नै) भन, "अल्लाहका हुन् ।" अनुग्रह( दान) उनले स्वयम्प्रति अनिवार्य ठहऱ्याएका छन् । उनले अवश्य तिमीहरूलाई पुनरुत्थानका दिनसम्म (निरन्तर) एकत्रित गर्दै जानेछन् । यस कुरामा केही सन्देह छैन । ती व्यक्तिहरू जसले आफ्नो स्वयम्लाई विनष्ट गरिसकेका छन् तिनीहरूले विश्वास गर्नेछैनन् ।

قُل لِّمَن مَّا فِي السَّمَاوَاتِ وَالْأَرْضِ ۖ قُل لِّلَّهِ ۚ كَتَبَ عَلَىٰ نَفْسِهِ الرَّحْمَةَ ۚ لَيَجْمَعَنَّكُمْ إِلَىٰ يَوْمِ الْقِيَامَةِ لَا رَيْبَ فِيهِ ۚ الَّذِينَ خَسِرُوا أَنفُسَهُمْ فَهُمْ لَا يُؤْمِنُونَ ١٢

१४. रात तथा दिनमा बास गर्ने सम्पूर्ण वस्तुहरू उनकै हुन् तथा उनी सर्वश्रोता, सर्वज्ञाता हुन् ।

وَلَهُ مَا سَكَنَ فِي اللَّيْلِ وَالنَّهَارِ ۚ وَهُوَ السَّمِيعُ الْعَلِيمُ ١٣

१५. तिमी भन, "के म आकाशमण्डल र पृथ्वीका स्रष्टा, जसले अरूको पालन-पोषण गर्छन् तर उनलाई पालन-पोषणको आवश्यक पर्दैन, यस्ता अल्लाहलाई छाडी अरू कसैलाई आफ्नो रक्षक बनाउँ?" तिमी भन, "मलाई शरण पर्ने व्यक्तिहरूमध्ये सर्वप्रथम शरणागत (आज्ञाकारी) व्यक्ति बन्ने आदेश भएको छ ।" तथा तिमी ती व्यक्तिहरूमध्येको नबन जसले (अल्लाहका) भागीदार निर्माण गर्छन् ।

قُلْ أَغَيْرَ اللَّهِ أَتَّخِذُ وَلِيًّا فَاطِرِ السَّمَاوَاتِ وَالْأَرْضِ وَهُوَ يُطْعِمُ وَلَا يُطْعَمُ ۗ قُلْ إِنِّي أُمِرْتُ أَنْ أَكُونَ أَوَّلَ مَنْ أَسْلَمَ ۖ وَلَا تَكُونَنَّ مِنَ الْمُشْرِكِينَ ١٤

१६. भन, "सत्य के हो भने, यदि मैले आफ्ना प्रतिपालकको अवज्ञा गरे भने एउटा भयानक दिनको दण्डबाट म डराउँछु ।"

قُلْ إِنِّي أَخَافُ إِنْ عَصَيْتُ رَبِّي عَذَابَ يَوْمٍ عَظِيمٍ ١٥

१७. त्यो व्यक्ति जसबाट त्यसदिन त्यो निवारण गरियो, त्यसप्रति (अल्लाहले)

مَّن يُصْرَفْ عَنْهُ يَوْمَئِذٍ فَقَدْ رَحِمَهُ ۚ وَذَٰلِكَ الْفَوْزُ الْمُبِينُ ١٦

निश्चय नै कृपा गरे । तथा त्यो एउटा स्पष्ट सफलता हो ।

وَاِنْ يَّمْسَسْكَ اللّٰهُ بِضُرٍّ فَلَا كَاشِفَ لَهٗٓ اِلَّا هُوَ ؕ وَاِنْ يَّمْسَسْكَ بِخَيْرٍ فَهُوَ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ﴿١٨﴾

१८. तथा यदि अल्लाहले तिमीलाई कुनै पीडा पुऱ्याएमा उनी स्वयम्बाहेक अन्य कसैले त्यसको निवारण गर्न सक्दैन; तथा यदि उनले तिमीलाई उत्तम (भाग) प्रदान गरे भने (पनि) जुन (कार्य) उनले गर्न चाहन्छन्, त्यसप्रति उनी पूर्ण सामर्थ्यवान छन् ।

وَهُوَ الْقَاهِرُ فَوْقَ عِبَادِهٖ ؕ وَهُوَ الْحَكِيْمُ الْخَبِيْرُ ﴿١٩﴾

१९. तथा उनी आफ्ना सृष्टिहरूमाथि– मानवजाति माथि पूर्ण क्षमतावान रहेका छन्, तथा उनी तत्त्वज्ञ, परिज्ञाता छन् ।

قُلْ اَيُّ شَيْءٍ اَكْبَرُ شَهَادَةً ؕ قُلِ اللّٰهُ ۙ شَهِيْدٌۢ بَيْنِيْ وَبَيْنَكُمْ ۚ وَاُوْحِيَ اِلَيَّ هٰذَا الْقُرْاٰنُ لِاُنْذِرَكُمْ بِهٖ وَمَنْۢ بَلَغَ ؕ اَئِنَّكُمْ لَتَشْهَدُوْنَ اَنَّ مَعَ اللّٰهِ اٰلِهَةً اُخْرٰى ؕ قُلْ لَّآ اَشْهَدُ ۚ قُلْ اِنَّمَا هُوَ اِلٰهٌ وَّاحِدٌ وَّاِنَّنِيْ بَرِيْٓءٌ مِّمَّا تُشْرِكُوْنَ ﴿٢٠﴾

२०. तिमी भन, “साक्षीको रूपमा सबैभन्दा गहकिलो कुन वस्तु रहेको छ?” भन, “तिमीहरू र मेराबीच अल्लाह (नै) साक्षी छन् । तथा यो कुरान मतर्फ यस कारण अवतीर्ण गरिएको छ ताकि यसद्वारा म तिमीहरूलाई र जससम्म यो पुग्छ, सावधान गर्न सकुँ । कस्तो कुरा ! तिमीहरू वास्तवमै अल्लाहलाई छाडी अन्य उपास्यहरू छन् भनी साक्षी दिन्छौ त? तिमी भन, “म (त्यस्तो) साक्षी दिन्न ।” भन, “उनी नै एकमात्र उपास्य हुन्, तथा तिमीहरू जुन वस्तुहरूलाई (उनका) भागीदार बनाउँछौ, म त्यसबाट पूर्णतया मुक्त रहेको छु ।

اَلَّذِيْنَ اٰتَيْنٰهُمُ الْكِتٰبَ يَعْرِفُوْنَهٗ كَمَا يَعْرِفُوْنَ اَبْنَآءَهُمْ ۘ اَلَّذِيْنَ خَسِرُوْٓا اَنْفُسَهُمْ فَهُمْ لَا يُؤْمِنُوْنَ ﴿٢١﴾

२१. जसलाई हामीले पुस्तक प्रदान गरेका छौं, तिनीहरूले उनलाई त्यसरी चिन्दछन् जसरी तिनीहरू आफ्ना पुत्रहरूलाई चिन्दछन् । परन्तु ती व्यक्तिहरू जसले आफ्ना आत्मालाई विनाश पारेका छन्, तिनीहरूले विश्वास गर्नेछैनन् ।

وَمَنْ اَظْلَمُ مِمَّنِ افْتَرٰى عَلَى اللّٰهِ كَذِبًا

२२. तथा त्यो व्यक्तिभन्दा ठूलो अन्यायकारी अर्को को हुनसक्छ र जसले अल्लाहप्रति

اَوْ كَذَّبَ بِاٰيٰتِهٖ ؕ اِنَّهٗ لَا يُفْلِحُ الظّٰلِمُوْنَ ﴿٢١﴾

मिथ्या आरोप लगाउँछ अथवा उनका चिह्नहरूलाई मिथ्या ठहऱ्याउँछ? निश्चय नै अन्यायकारी व्यक्तिहरू कदापि कृतकार्य हुन सक्दैनन् ।

وَيَوْمَ نَحْشُرُهُمْ جَمِيْعًا ثُمَّ نَقُوْلُ لِلَّذِيْنَ اَشْرَكُوْٓا اَيْنَ شُرَكَآؤُكُمُ الَّذِيْنَ كُنْتُمْ تَزْعُمُوْنَ ﴿٢٢﴾

२३. तथा त्यस दिन (का बारेमा सोच) जब हामी तिनीहरू सबैलाई एकत्रित गर्नेछौं, त्यसपछि हामी ती व्यक्तिहरूलाई जसले (अल्लाहका) भागीदारहरूको निर्माण गरेका छन्, "तिमीहरूले भनेका ती भागीदारहरू कहाँ छन्, जसका बारेमा तिमीहरू दावी गर्ने गर्थ्यौ?" भनी सोध्नेछौं ।

ثُمَّ لَمْ تَكُنْ فِتْنَتُهُمْ اِلَّآ اَنْ قَالُوْا وَاللّٰهِ رَبِّنَا مَا كُنَّا مُشْرِكِيْنَ ﴿٢٣﴾

२४. त्यसपछि तिनीहरूको उपद्रव (को अन्त) केही हुने छैन सिवाय के भने तिनीहरूले "हाम्रा प्रतिपालक, अल्लाहको शपथ, हामी त मूर्तिपूजक थिएनौ" भन्नेछन्।

اُنْظُرْ كَيْفَ كَذَبُوْا عَلٰٓى اَنْفُسِهِمْ وَضَلَّ عَنْهُمْ مَّا كَانُوْا يَفْتَرُوْنَ ﴿٢٤﴾

२५. हेर कसरी तिनीहरू आफैविरुद्ध मिथ्या बोल्छन् । तथा जुन (कुरा) तिनीहरूले गढ्ने गर्थे त्यो तिनीहरूका निम्ति उपयोगी हुन सकेन ।

وَمِنْهُمْ مَّنْ يَّسْتَمِعُ اِلَيْكَ ۚ وَجَعَلْنَا عَلٰى قُلُوْبِهِمْ اَكِنَّةً اَنْ يَّفْقَهُوْهُ وَفِيْٓ اٰذَانِهِمْ وَقْرًا ؕ وَاِنْ يَّرَوْا كُلَّ اٰيَةٍ لَّا يُؤْمِنُوْا بِهَا ؕ حَتّٰٓى اِذَا جَآءُوْكَ يُجَادِلُوْنَكَ يَقُوْلُ الَّذِيْنَ كَفَرُوْٓا اِنْ هٰذَآ اِلَّآ اَسَاطِيْرُ الْاَوَّلِيْنَ ﴿٢٥﴾

२६. तथा तिनीहरूमध्ये केही यस्ता व्यक्तिहरू पनि छन् जसले तिम्रा (कुरा) सुन्छन्, परन्तु हामीले तिनीहरूका हृदयमा पर्दा तथा कानमा बहिरोपना राखिदिएका छौं, ताकि तिनीहरूले बुझ्न नसकून् । तथा यद्यपि तिनीहरूले प्रत्येक चिह्नको अवलोकन गरे भने (पनि) तिनीहरूले त्यसप्रति विश्वास गर्नेछैनन्, यहाँसम्म कि जब तिनीहरू तिमीसमक्ष आउँछन्, तिमीसँग वादविवाद गर्दै, अविश्वासी व्यक्तिहरू भन्छन्, "यो त केवल पूर्ववर्तीहरूको दन्त्यकथाबाहेक केही होइन ।

وَهُمْ يَنْهَوْنَ عَنْهُ وَيَنْـَٔوْنَ عَنْهُ ۚ وَاِنْ يُّهْلِكُوْنَ اِلَّآ اَنْفُسَهُمْ وَمَا

२७. तथा (अन्य व्यक्तिहरूलाई) त्यसप्रति (विश्वास गर्न) तिनीहरू निषेध गर्छन् तथा (आफूलाई पनि) तिनीहरू त्यसबाट बन्चित

يَشْعُرُوْنَ ﴿٢٧﴾

राख्छन् । तथा तिनीहरू आफूलाई बाहेक कसैलाई विनष्ट गर्दैनन् , केवल तिनीहरू बुझ्दैनन् ।

وَلَوْ تَرٰٓى اِذْ وُقِفُوْا عَلَى النَّارِ فَقَالُوْا
يٰلَيْتَنَا نُرَدُّ وَلَا نُكَذِّبَ بِاٰيٰتِ رَبِّنَا وَ
نَكُوْنَ مِنَ الْمُؤْمِنِيْنَ ﴿٢٨﴾

२८. यदि तिमीले तिनीहरूलाई अग्निकुण्ड अगाडि खडा गरिएको अवस्थामा देख्न मात्र सके ! तिनीहरूले भन्नेछन्, "हाय, यदि हामीलाई फर्काइन्थ्यो भने । तथा (तब) हामी हाम्रा प्रतिपालकका चिह्नहरूलाई मिथ्या भनी व्यवहार गर्ने थिएनौं, तथा विश्वासीहरूमध्येका बन्ने थियौं ।"

بَلْ بَدَا لَهُمْ مَّا كَانُوْا يُخْفُوْنَ مِنْ
قَبْلُ ۭ وَلَوْ رُدُّوْا لَعَادُوْا لِمَا نُهُوْا عَنْهُ
وَاِنَّهُمْ لَكٰذِبُوْنَ ﴿٢٩﴾

२९. होइन, (अपितु) जुन कुरा तिनीहरू पहिला लुकाउने गर्थे त्यो कुरा (अब) तिनीहरूसमक्ष अनावरित भएको छ । तथा यदि तिनीहरूलाई फर्काइन्थ्यो भने तिनीहरू निश्चय नै पुन: त्यही कार्यतर्फ उन्मुख हुने थिए जसबाट तिनीहरूलाई रोकिएको थियो । तथा तिनीहरू निश्चयपूर्वक मिथ्याभाषी हुन् ।

وَقَالُوْٓا اِنْ هِيَ اِلَّا حَيَاتُنَا الدُّنْيَا وَمَا
نَحْنُ بِمَبْعُوْثِيْنَ ﴿٣٠﴾

३०. तथा तिनीहरू भन्छन्, "हाम्रो (यो) वर्तमान जीवनबाहेक अन्य केही वस्तु रहेको छैन, तथा हाम्रो पुनरुत्थान हुनेछैन ।"

وَلَوْ تَرٰٓى اِذْ وُقِفُوْا عَلٰى رَبِّهِمْ ۭ قَالَ
اَلَيْسَ هٰذَا بِالْحَقِّ ۭ قَالُوْا بَلٰى وَرَبِّنَا ۭ
قَالَ فَذُوْقُوا الْعَذَابَ بِمَا كُنْتُمْ
تَكْفُرُوْنَ ﴿٣١﴾

३१. तथा यदि तिमीले तिनीहरूलाई आफ्ना प्रतिपालकका सामुन्ने खडा गरिएको अवस्थामा देख्न सके । तब उनले भन्नेछन्, "के यो (दोस्रो जीवन) सत्य होइन र?" तिनीहरूले भन्नेछन्, "हो, हाम्रा प्रतिपालकको शपथ ।" उनले भन्नेछन्, "तब तिमीहरू आफ्ना अविश्वासको दण्ड को (स्वाद) चाख ।"

قَدْ خَسِرَ الَّذِيْنَ كَذَّبُوْا بِلِقَاۗءِ اللّٰهِ ۭ
حَتّٰٓى اِذَا جَاۗءَتْهُمُ السَّاعَةُ بَغْتَةً قَالُوْا
يٰحَسْرَتَنَا عَلٰي مَا فَرَّطْنَا فِيْهَا ۙ وَهُمْ
يَحْمِلُوْنَ اَوْزَارَهُمْ عَلٰي ظُهُوْرِهِمْ ۭ اَلَا

३२. जुन व्यक्तिहरू अल्लाहसँग साक्षात् हुने सत्यलाई अस्वीकार गर्छन्, तिनीहरू निश्चय घाटाग्रस्त रहेका छन्, यहाँ सम्म कि जब (सचेत हुनु अगावै) तिनीहरूसमक्ष अकस्मात् त्यो घडी आउनेछ, तब

سَآءَ مَا يَزِرُوْنَ ﴿٣١﴾

तिनीहरूले भन्नेछन्, "हाय, त्यस (घडी) प्रति लापरवाही गरेबापत हामीलाई धिक्कार ।" तथा तिनीहरूले आफ्नो बोझ आफ्ना पिठ्यूंमा उठाउनेछन् । निश्चय नै, जुन कुरा तिनीहरूले उठाउँछन् त्यो अति निकृष्ट रहेको छ ।

وَمَا الْحَيٰوةُ الدُّنْيَآ اِلَّا لَعِبٌ وَّلَهْوٌ ؕ وَلَلدَّارُ الْاٰخِرَةُ خَيْرٌ لِّلَّذِيْنَ يَتَّقُوْنَ ؕ اَفَلَا تَعْقِلُوْنَ ﴿٣٢﴾

३३. तथा पार्थिव जीवन खेल र आमोदप्रमोदबाहेक केही होइन । तथा सत्यनिष्ठ व्यक्तिहरूका निम्ति परलोकको निवास निश्चय नै उत्तम रहेको छ । तब के तिमीहरू बुझ्दैनौ त?

قَدْ نَعْلَمُ اِنَّهٗ لَيَحْزُنُكَ الَّذِيْ يَقُوْلُوْنَ فَاِنَّهُمْ لَا يُكَذِّبُوْنَكَ وَلٰكِنَّ الظّٰلِمِيْنَ بِاٰيٰتِ اللّٰهِ يَجْحَدُوْنَ ﴿٣٣﴾

३४. जुन कुरा तिनीहरू गर्छन् त्यसले तिमीलाई अवश्य दुःखित तुल्याउँछ भनी हामी (राम्ररी) जान्दछौं, वस्तुतः तिमीलाई तिनीहरूले झुट्टा ठहऱ्याउँदैनन् परन्तु ती अल्लाहका चिह्नहरू हुन् जसलाई अन्यायकारीहरू अस्वीकार गर्छन् ।

وَلَقَدْ كُذِّبَتْ رُسُلٌ مِّنْ قَبْلِكَ فَصَبَرُوْا عَلٰى مَا كُذِّبُوْا وَاُوْذُوْا حَتّٰٓى اَتٰىهُمْ نَصْرُنَا ۚ وَلَا مُبَدِّلَ لِكَلِمٰتِ اللّٰهِ ۚ وَلَقَدْ جَآءَكَ مِنْ نَّبَاِى الْمُرْسَلِيْنَ ﴿٣٤﴾

३५. तथा तिमीभन्दा अघिका सन्देशवाहकहरूलाई पनि निश्चय नै अस्वीकार गरिएको छ, परन्तु जबसम्म हाम्रो मद्दत तिनीहरूलाई प्राप्त भएन तबसम्म उनीहरूको अस्वीकार र उत्पीडनप्रति (प्रतिरोध नगरी) तिनीहरूले धैर्यधारण गरिरहे । तथा अल्लाहको वचनलाई कसैले परिवर्तन गर्न सक्दैन । तथा तिमी समक्ष (अतीतका) सन्देशवाहकहरूबारे सूचना आइसकेको छ ।

وَاِنْ كَانَ كَبُرَ عَلَيْكَ اِعْرَاضُهُمْ فَاِنِ اسْتَطَعْتَ اَنْ تَبْتَغِيَ نَفَقًا فِى الْاَرْضِ اَوْ سُلَّمًا فِى السَّمَآءِ فَتَاْتِيَهُمْ بِاٰيَةٍ ؕ وَلَوْ شَآءَ اللّٰهُ لَجَمَعَهُمْ عَلَى الْهُدٰى فَلَا تَكُوْنَنَّ مِنَ الْجٰهِلِيْنَ ﴿٣٥﴾

३६. तथा यदि तिनीहरूको विमुखता तिम्रानिम्ति अति कष्टकर हुन्छ भने, यदि तिमी जमिनमनि सुरुङ्ग बनाउन अथवा आकाशसम्म सिँढी लगाउन सक्षम छौ भने, तिनीहरूका निम्ति कोही चिह्न उपस्थित गर, (परन्तु तिमीले त्यसो गर्न सक्दैनौ) । तथा यदि अल्लाहले आफ्ना इच्छालाई (लागू) गरेका भए, अवश्य नै उनले तिनीहरू

सबैलाई मार्गदर्शनतर्फ एकत्रित गर्ने थिए । अतः तिमी ज्ञानहीन व्यक्तिहरूमध्येको नबन ।

إِنَّمَا يَسْتَجِيبُ الَّذِينَ يَسْمَعُونَ ۘ وَالْمَوْتَىٰ يَبْعَثُهُمُ اللَّهُ ثُمَّ إِلَيْهِ يُرْجَعُونَ ﴿٣٦﴾

३७. जसले ध्यानपूर्वक सुन्ने गर्छन्, तिनीहरूले मात्र उत्तर दिन्छन् । तथा जुन व्यक्तिहरू मृत छन्, तिनीहरूलाई अल्लाहले (जीवनतर्फ) उत्थान गर्नेछन्, त्यसपछि तिनीहरूलाई उनीतर्फ फर्काएर लगिनेछ ।

وَقَالُوا لَوْلَا نُزِّلَ عَلَيْهِ آيَةٌ مِّن رَّبِّهِ ۚ قُلْ إِنَّ اللَّهَ قَادِرٌ عَلَىٰ أَن يُنَزِّلَ آيَةً وَلَٰكِنَّ أَكْثَرَهُمْ لَا يَعْلَمُونَ ﴿٣٧﴾

३८. अनि तिनीहरू भन्छन्, "उनका प्रतिपालकका तर्फबाट उनीप्रति किन कुनै चिह्न अवतीर्ण गरिएन?" तिमी भन, "निश्चय नै चिह्न अवतीर्ण गर्न अल्लाह सामर्थ्यवान छन्, परन्तु तिनीहरूमध्ये अधिकतर (व्यक्तिहरू) जान्दैनन् ।

وَمَا مِن دَابَّةٍ فِي الْأَرْضِ وَلَا طَائِرٍ يَطِيرُ بِجَنَاحَيْهِ إِلَّا أُمَمٌ أَمْثَالُكُم ۚ مَّا فَرَّطْنَا فِي الْكِتَابِ مِن شَيْءٍ ۚ ثُمَّ إِلَىٰ رَبِّهِمْ يُحْشَرُونَ ﴿٣٨﴾

३९. जमिनमा (हिँड्ने) सबै जनावर तथा आफ्ना दुबै पखेटाद्वारा उड्ने सबै पंक्षीहरू तिमीहरूझैं जमात हुन् । हामीले यस पुस्तकमा कुनै कुरा उल्लेख गर्न बाँकी राखेका छैनौं । त्यसपश्चात् तिनीहरूलाई एकत्रित गरेर तिनीहरूका प्रतिपालकतर्फ लगिनेछ ।

وَالَّذِينَ كَذَّبُوا بِآيَاتِنَا صُمٌّ وَبُكْمٌ فِي الظُّلُمَاتِ ۗ مَن يَشَإِ اللَّهُ يُضْلِلْهُ وَمَن يَشَأْ يَجْعَلْهُ عَلَىٰ صِرَاطٍ مُّسْتَقِيمٍ ﴿٣٩﴾

४०. ती व्यक्तिहरू जसले हाम्रा चिह्नहरूलाई अस्वीकार गरेका छन्, तिनीहरू बहिरा र लाटा हुन् – घोर अन्धकारमा रहन्छन् । अल्लाहले जसका सम्बन्धमा त्यो निर्णय गर्छन् त्यसलाई पथभ्रष्ट हुनदिन्छन् तथा जसका बारेमा उनले निश्चय गर्छन् त्यसलाई सन्मार्गमा हिँडाउँछन् ।

قُلْ أَرَأَيْتَكُمْ إِنْ أَتَاكُمْ عَذَابُ اللَّهِ أَوْ أَتَتْكُمُ السَّاعَةُ أَغَيْرَ اللَّهِ تَدْعُونَ إِن كُنتُمْ صَادِقِينَ ﴿٤٠﴾

४१. तिमी भन, यदि तिमीहरूमाथि अल्लाहको दण्ड आइलागेमा अथवा तिमीहरूसमक्ष निर्धारित समय (घडी) आइपुगेमा (तिमीहरूको उत्तर के होला भन्ने) तिमीहरूको सोचाइ रहेको छ त?

यदि तिमीहरू साँचा हौ भने अल्लाहलाई छाडी अन्य कसैलाई पुकार्ने छौ त?

४२. होइन, अपितु तिमीहरूले केवल उनैलाई मात्र पुकार्नेछौ, त्यसपश्चात् यदि उनले चाहे भने जुन कुरो (टार्न) का निम्ति तिमीहरूले उनलाई पुकार्छौ त्यसलाई उनले टार्नेछन् । तथा तिमीहरू जसलाई (उनको) भागीदार तुल्याउँछौ त्यसलाई बिर्सनेछौ ।

بَلْ اِيَّاهُ تَدْعُوْنَ فَيَكْشِفُ مَا تَدْعُوْنَ اِلَيْهِ اِنْ شَآءَ وَتَنْسَوْنَ مَا تُشْرِكُوْنَ ﴿٤١﴾

४३. तथा निश्चय नै हामीले तिमीभन्दा अधिका जातिहरूका लागि (सन्देशवाहकहरू) पठाएका थियौं, त्यसपश्चात् हामीले तिनीहरूलाई दरिद्रता र विपत्तिद्वारा पक्रेका थियौं– ताकि तिनीहरूले आफूलाई विनयशील बनाउन् ।

وَلَقَدْ اَرْسَلْنَآ اِلٰٓى اُمَمٍ مِّنْ قَبْلِكَ فَاَخَذْنٰهُمْ بِالْبَاْسَآءِ وَالضَّرَّآءِ لَعَلَّهُمْ يَتَضَرَّعُوْنَ ﴿٤٢﴾

४४. त्यसो भए जब हाम्रो सँजाय तिनीहरूमाथि आइपर्‍यो, किन तिनीहरू विनयशील भएनन् त? परन्तु तिनीहरूको हृदय कठोर हुन गयो तथा सैतानले तिनीहरूले गर्ने गरेका सबै कार्यहरूलाई तिनीहरूका दृष्टिमा राम्रा (देखिने) तुल्यायो

فَلَوْلَآ اِذْ جَآءَهُمْ بَاْسُنَا تَضَرَّعُوْا وَلٰكِنْ قَسَتْ قُلُوْبُهُمْ وَزَيَّنَ لَهُمُ الشَّيْطٰنُ مَا كَانُوْا يَعْمَلُوْنَ ﴿٤٣﴾

४५. जब तिनीहरूले त्यस कुरालाई बिर्सिए जुन कुराको तिनीहरूलाई स्मरण गराइन्थ्यो तब हामीले तिनीहरूका लागि हरेक वस्तुका ढोकाहरु खोली दियौं, अतः जब तिनीहरू तिनीहरूलाई प्रदान गरिएको कुराप्रति प्रसन्न भए, तब हामीले तिनीहरूलाई अकस्मात् पक्डियौ, अनि हेर ! तिनीहरू पूर्णरूपले निराशाको भुँवरीमा डुबे ।

فَلَمَّا نَسُوْا مَا ذُكِّرُوْا بِهٖ فَتَحْنَا عَلَيْهِمْ اَبْوَابَ كُلِّ شَيْءٍ ؕ حَتّٰٓى اِذَا فَرِحُوْا بِمَآ اُوْتُوْٓا اَخَذْنٰهُمْ بَغْتَةً فَاِذَا هُمْ مُّبْلِسُوْنَ ﴿٤٤﴾

४६. अतः अत्याचारी व्यक्तिहरूको असलहरू काटियो । तथा सम्पूर्ण प्रशंसाहरू विश्व- ब्रह्माण्डहरूका प्रतिपालक अल्लाहकै निम्ति रहेका छन् ।

فَقُطِعَ دَابِرُ الْقَوْمِ الَّذِيْنَ ظَلَمُوْا ؕ وَالْحَمْدُ لِلّٰهِ رَبِّ الْعٰلَمِيْنَ ﴿٤٥﴾

४७. तिमी भन, "तिमीहरूको के सोचाई छ? यदि अल्लाहले तिमीहरूको श्रवण र

قُلْ اَرَءَيْتُمْ اِنْ اَخَذَ اللّٰهُ سَمْعَكُمْ وَ

तिमीहरुको दृष्टि शक्तिलाई लगे भने, र तिमीहरूका हृदयमाथि मोहर लगाए भने, अल्लाहबाहेक अन्य कुन उपास्य यस्तो छ जसले ती वस्तुहरू तिमीहरूलाई फर्काउन सक्छ?" हेर हामी कसरी चिह्नहरू व्याख्या गर्छौं, तथापि तिनीहरू विमुख हुन्छन् ।

أَبْصَارَكُمْ وَخَتَمَ عَلَىٰ قُلُوبِكُم مَّنْ إِلَٰهٌ غَيْرُ اللَّهِ يَأْتِيكُم بِهِ ۗ انظُرْ كَيْفَ نُصَرِّفُ الْآيَاتِ ثُمَّ هُمْ يَصْدِفُونَ ﴿٤٦﴾

४८. भन, "तिमीहरूको के विचार छ? यदि तिमीहरूमाथि अकस्मात् अथवा प्रष्ट रूपमा अल्लाहको सँजाय आइलागेमा, अत्याचारी व्यक्तिहरूबाहेक अन्य कोही विनष्ट हुनसक्छ र? "

قُلْ أَرَأَيْتَكُمْ إِنْ أَتَاكُمْ عَذَابُ اللَّهِ بَغْتَةً أَوْ جَهْرَةً هَلْ يُهْلَكُ إِلَّا الْقَوْمُ الظَّالِمُونَ ﴿٤٧﴾

४९. तथा हामीले सन्देशवाहकहरूलाई केवल शुभसन्देश बहनकर्तास्वरूप र सावधानकर्तास्वरूप पठाउँछौं । अतः जो व्यक्तिहरू विश्वास गर्छन् र (आफ्नु) सुधार गर्छन्, तिनीहरूप्रति कुनै त्रास (आइलाग्ने) छैन, न त तिनीहरू शोकाकुल नै हुनेछन् ।

وَمَا نُرْسِلُ الْمُرْسَلِينَ إِلَّا مُبَشِّرِينَ وَمُنذِرِينَ ۖ فَمَنْ آمَنَ وَأَصْلَحَ فَلَا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُونَ ﴿٤٨﴾

५०. तथा जसले हाम्रा चिह्नहरूलाई अस्वीकार गर्छन्, तिनीहरूको अवज्ञाका कारण तिनीहरूमाथि दण्ड आइपर्नेछ ।

وَالَّذِينَ كَذَّبُوا بِآيَاتِنَا يَمَسُّهُمُ الْعَذَابُ بِمَا كَانُوا يَفْسُقُونَ ﴿٤٩﴾

५१. तिमी भन, "मसँग अल्लाहको खजाना छ," भनी म तिमीहरूलाई भन्दिन, न त म अदृष्य कुराबारे नै कुनै ज्ञान राख्छु, न म एउटा फरिस्ता हुँ" भनी तिमीहरूलाई भन्दछु । म त केवल त्यसैको अनुसरण गर्छु जुन कुरा मप्रति आकाशवाणी गरिएको छ ।" भन, "के एउटा अन्धो व्यक्ति र एउटा दृष्टिशक्तियुक्त व्यक्ति बराबर हुनसक्छन् र ?" त्यसोभए के तिमीहरू सोचविचार गर्दैनौ त?

قُل لَّا أَقُولُ لَكُمْ عِندِي خَزَائِنُ اللَّهِ وَلَا أَعْلَمُ الْغَيْبَ وَلَا أَقُولُ لَكُمْ إِنِّي مَلَكٌ ۖ إِنْ أَتَّبِعُ إِلَّا مَا يُوحَىٰ إِلَيَّ ۚ قُلْ هَلْ يَسْتَوِي الْأَعْمَىٰ وَالْبَصِيرُ ۚ أَفَلَا تَتَفَكَّرُونَ ﴿٥٠﴾

ع ٥

५२. तथा त्यस द्वारा तिनीहरूलाई सावधान गर जुन व्यक्तिहरू तिनीहरूलाई तिनका प्रतिपालकसमक्ष एकत्रित गरिनेछ भनी डराउँछन्, अर्थात् तिनीहरूका निम्ति

وَأَنذِرْ بِهِ الَّذِينَ يَخَافُونَ أَن يُحْشَرُوا إِلَىٰ رَبِّهِمْ ۙ لَيْسَ لَهُم مِّن دُونِهِ وَلِيٌّ وَلَا شَفِيعٌ لَّعَلَّهُمْ يَتَّقُونَ ﴿٥١﴾

उनीबाहेक न कुनै मित्र हुनेछ न सिफारिशकर्ता। ताकि तिनीहरू अल्लाहसित डराऊन्।

وَلَا تَطْرُدِ الَّذِيْنَ يَدْعُوْنَ رَبَّهُمْ بِالْغَدٰوةِ وَالْعَشِيِّ يُرِيْدُوْنَ وَجْهَهٗ ؕ مَا عَلَيْكَ مِنْ حِسَابِهِمْ مِّنْ شَيْءٍ وَّمَا مِنْ حِسَابِكَ عَلَيْهِمْ مِّنْ شَيْءٍ فَتَطْرُدَهُمْ فَتَكُوْنَ مِنَ الظّٰلِمِيْنَ ﴿٥٢﴾

५३. तथा ती व्यक्तिहरूलाई नधुत्कार जो आफ्ना प्रतिपालकको अनुग्रह प्राप्तिको चाहनाका साथ बिहानी र बेलुकी उनलाई पुकार्छन् । तिनीहरूका निम्ति तिमी जवाफदेही छैनौ न त तिम्रा निम्ति तिनीहरू जवाफदेही छन्, अतः तिमीले तिनीहरूलाई धुत्कारेमा तिमी अत्याचारी बन्नेछौ ।

وَكَذٰلِكَ فَتَنَّا بَعْضَهُمْ بِبَعْضٍ لِّيَقُوْلُوْٓا اَهٰٓؤُلَآءِ مَنَّ اللّٰهُ عَلَيْهِمْ مِّنْۢ بَيْنِنَا ؕ اَلَيْسَ اللّٰهُ بِاَعْلَمَ بِالشّٰكِرِيْنَ ﴿٥٣﴾

५४. तथा तिनीहरूमध्ये केही व्यक्तिहरूलाई अन्य केही व्यक्तिहरूद्वारा हामीले यस प्रकार जाँचेका छौं, ताकि तिनीहरूले भनून, "के यिनीहरू नै हुन् जसलाई अल्लाहले हामीमध्ये अनुग्रह गरेका छन्?" के अल्लाहले कृतज्ञ व्यक्तिहरूलाई सर्वाधिक जान्दैनन् र?

وَاِذَا جَآءَكَ الَّذِيْنَ يُؤْمِنُوْنَ بِاٰيٰتِنَا فَقُلْ سَلٰمٌ عَلَيْكُمْ كَتَبَ رَبُّكُمْ عَلٰى نَفْسِهِ الرَّحْمَةَ ۙ اَنَّهٗ مَنْ عَمِلَ مِنْكُمْ سُوْٓءًۢا بِجَهَالَةٍ ثُمَّ تَابَ مِنْۢ بَعْدِهٖ وَاَصْلَحَ فَاَنَّهٗ غَفُوْرٌ رَّحِيْمٌ ﴿٥٤﴾

५५. तथा ती व्यक्तिहरू जसले हाम्रा चिह्नहरूप्रति विश्वास गर्छन् जब तिमीसमक्ष आउँछन्, (तब) तिमी भन, "तिमीहरूप्रति शान्ति (वर्षण) होस् ! तिमीहरूका प्रतिपालकले स्वयम्प्रति कृपा (प्रदर्शन) कर्तव्यस्वरूप ठहराएका छन्, त्यसकारण तिमीहरूमध्ये जसले अज्ञानतावश पाप गर्छ र त्यसपछि प्रायश्चित गर्छ तथा सुधार गर्छ भने, उनी परम क्षमाशील, परम दानशील रहेका छन् ।

وَكَذٰلِكَ نُفَصِّلُ الْاٰيٰتِ وَلِتَسْتَبِيْنَ سَبِيْلُ الْمُجْرِمِيْنَ ﴿٥٥﴾

५६. तथा हामी यसै प्रकार चिह्नहरू स्पष्टरूपमा वर्णन गर्छौं- (ताकि तिमीहरू क्षमायाचना गर) तथा अपराधीहरूको मार्ग स्पष्ट होस् ।

قُلْ اِنِّيْ نُهِيْتُ اَنْ اَعْبُدَ الَّذِيْنَ تَدْعُوْنَ مِنْ دُوْنِ اللّٰهِ ؕ قُلْ لَّآ اَتَّبِعُ اَهْوَآءَكُمْ ۙ

५७. (तिमी) भन, "तिमीहरू अल्लाहलाई छाडी जसलाई पुकार्छौ तिनीहरूको उपासना गर्न मलाई निषेध गरिएको छ ।"

قَدْ ضَلَلْتُ إِذًا وَّمَآ أَنَا مِنَ الْمُهْتَدِيْنَ ﴿٥٧﴾

भन, "म तिमीहरूका व्यर्थ चाहनाहरूको अनुसरण गर्नेछैन । त्यसो गरेमा, म पथभ्रष्ट हुनेछु र म सन्मार्ग प्राप्त व्यक्तिहरूमध्येको हुन सक्नेछैन ।"

قُلْ إِنِّيْ عَلٰى بَيِّنَةٍ مِّنْ رَّبِّيْ وَكَذَّبْتُمْ بِهٖ ۚ مَا عِنْدِيْ مَا تَسْتَعْجِلُوْنَ بِهٖ ۚ إِنِ الْحُكْمُ إِلَّا لِلّٰهِ ۚ يَقُصُّ الْحَقَّ وَهُوَ خَيْرُ الْفَاصِلِيْنَ ﴿٥٨﴾

५८. (तिमी) भनः "म मेरा प्रतिपालकका तर्फबाट एउटा स्पष्ट प्रमाणप्रति -कायम) छु तथा तिमीहरू त्यसलाई अस्वीकार गर्छौ । जुन कुराका बारेमा तिमीहरू त्यो चाँडो होस् भन्ने चाहना राख्छौ त्यो कुरा मेरो (सामर्थ्यमा) छैन । निर्णय कसैको अधिकारमा छैन परन्तु अल्लाहको (हातमा) । उनी सत्यवर्णन गर्छन्, तथा उनी निर्णायकहरूमध्येका सर्वश्रेष्ठ निर्णायक रहेका छन् ।"

قُلْ لَّوْ أَنَّ عِنْدِيْ مَا تَسْتَعْجِلُوْنَ بِهٖ لَقُضِيَ الْأَمْرُ بَيْنِيْ وَبَيْنَكُمْ ۚ وَاللّٰهُ أَعْلَمُ بِالظّٰلِمِيْنَ ﴿٥٩﴾

५९. भनः "तिमीहरूले चाँडो होस् भन्न चाहेको कुरा यदि मेरो (क्षमतामा) रहेको भए, निश्चय नै, तिमीहरू र मेरा बीच त्यस मामिलाको निर्णय भइसक्ने थियो । तथा अन्यायकारीहरूलाई अल्लाहले सर्वाधिक जान्दछन् ।

وَعِنْدَهٗ مَفَاتِحُ الْغَيْبِ لَا يَعْلَمُهَآ إِلَّا هُوَ ۚ وَيَعْلَمُ مَا فِي الْبَرِّ وَالْبَحْرِ ۚ وَمَا تَسْقُطُ مِنْ وَّرَقَةٍ إِلَّا يَعْلَمُهَا وَلَا حَبَّةٍ فِيْ ظُلُمٰتِ الْأَرْضِ وَلَا رَطْبٍ وَّلَا يَابِسٍ إِلَّا فِيْ كِتٰبٍ مُّبِيْنٍ ﴿٦٠﴾

६०. तथा अदृश्य (जगत) को साँचो उनीसँगै छ; उनीबाहेक तिनलाई अन्य कसैले जान्दैन । तथा धर्तीमा जे छ तथा समुद्र ( मा जे छ त्यसको) ज्ञान उनलाई छ । तथा कुनै एउटा पत्ता खस्दैन; परन्तु उनले त्यसलाई जान्दछन्, धर्तीको घोर अन्धकारमा रहेको कुनै अन्नको दाना अथवा कुनै काँचो वा सुकेको यस्तो वस्तु छैन जसको विवरण स्पष्ट पुस्तकमा (लिखित) नहोस् ।

وَهُوَ الَّذِيْ يَتَوَفّٰىكُمْ بِالَّيْلِ وَيَعْلَمُ مَا جَرَحْتُمْ بِالنَّهَارِ ثُمَّ يَبْعَثُكُمْ فِيْهِ لِيُقْضٰٓى أَجَلٌ مُّسَمًّى ۚ ثُمَّ إِلَيْهِ مَرْجِعُكُمْ ثُمَّ يُنَبِّئُكُمْ بِمَا كُنْتُمْ تَعْمَلُوْنَ ﴿٦١﴾

६१. तथा उनै हुन् जसले तिमीहरूका आत्मालाई रात्रि समयमा ग्रहण गर्छन् तथा जुनकार्य तिमीहरू दिनको समयमा गर्ने गर्छौ त्यसलाई जान्दछन्; त्यसपछि पुनः तिमीहरूलाई त्यसमा (दिनमा) उनले

उठाउँछन्, ताकि निर्धारित समयावधि पूरा हुनसकोस् । त्यसपछि उनीतर्फ नै तिमीहरूले फर्कनु छ । तब तिमीहरूले गर्ने गरेका कार्यहरूबारे उनले तिमीहरूलाई अवगत गराउनेछन् ।

وَهُوَ الْقَاهِرُ فَوْقَ عِبَادِهٖ وَيُرْسِلُ عَلَيْكُمْ حَفَظَةً ؕ حَتّٰۤى اِذَا جَآءَ اَحَدَكُمُ الْمَوْتُ تَوَفَّتْهُ رُسُلُنَا وَهُمْ لَا يُفَرِّطُوْنَ ﴿٦١﴾

६२. तथा उनी आफ्ना सेवकहरूमा सर्वेसर्वा रहेका छन्, तथा उनी तिमीहरूको (हेरचाहका निम्ति) अभिभावक (संरक्षक)हरू पठाउँछन्, अतः जब तिमीहरूमध्ये कसैको मृत्युघडी आउँछ, हाम्रा दूतहरूले त्यसको आत्मालाई कब्जा गर्छन्, तथा तिनीहरूले कुनै कमी गर्दैनन् ।

ثُمَّ رُدُّوْۤا اِلَى اللّٰهِ مَوْلٰىهُمُ الْحَقِّ ؕ اَلَا لَهُ الْحُكْمُ وَهُوَ اَسْرَعُ الْحٰسِبِيْنَ ﴿٦٢﴾

६३. त्यसपछि तिनीहरूलाई तिनका सच्चा स्वामी अल्लाहतर्फ फर्काइन्छ । निश्चय नै निर्णय उनकै (हातमा) छ । तथा उनी हिसाब किताब लिनेहरूमा सबैभन्दा तीव्र छन् ।

قُلْ مَنْ يُّنَجِّيْكُمْ مِّنْ ظُلُمٰتِ الْبَرِّ وَالْبَحْرِ تَدْعُوْنَهٗ تَضَرُّعًا وَّخُفْيَةً ۚ لَئِنْ اَنْجٰىنَا مِنْ هٰذِهٖ لَنَكُوْنَنَّ مِنَ الشّٰكِرِيْنَ ﴿٦٣﴾

६४. तिमी भन, "तिमीहरूलाई धर्ती र समुद्रको विपत्तिबाट कसले रक्षा गर्छ ?" जब तिमीहरू उनलाई विनयपूर्वक र गुप्तरूपमा पुकार्दै भन्छौ, "यदि उनले हामीलाई यसबाट उद्धार गरे भने हामी अवश्य नै कृतज्ञ व्यक्तिहरूमध्येका बन्नेछौं ।"

قُلِ اللّٰهُ يُنَجِّيْكُمْ مِّنْهَا وَمِنْ كُلِّ كَرْبٍ ثُمَّ اَنْتُمْ تُشْرِكُوْنَ ﴿٦٤﴾

६५. तिमी भन, "अल्लाहले तिमीहरूलाई तिनीहरुबाट र हरेक विपत्तिबाट रक्षा गर्छन्, तथापि तिमीहरू (उनका) सहकर्मी भागीदार तुल्याउने गर्छौ ।

قُلْ هُوَ الْقَادِرُ عَلٰۤى اَنْ يَّبْعَثَ عَلَيْكُمْ عَذَابًا مِّنْ فَوْقِكُمْ اَوْ مِنْ تَحْتِ اَرْجُلِكُمْ اَوْ يَلْبِسَكُمْ شِيَعًا وَّيُذِيْقَ بَعْضَكُمْ بَاْسَ بَعْضٍ ؕ اُنْظُرْ كَيْفَ نُصَرِّفُ

६६. तिमी भन, "तिमीहरूका माथिबाट अथवा तिमीहरूका पाउ मनिबाट तिमीहरूप्रति दण्ड प्रेषण गर्न अथवा त्यसलाई तिमीहरूलाई (परस्पर विरोधी) सम्प्रदायहरूमा विभाजन गर्ने तिमीहरूको

الْاٰيٰتِ لَعَلَّهُمْ يَفْقَهُوْنَ ﴿٦٥﴾

भाग्यस्वरूप* बनाउन र तिमीहरूलाई परस्पर भिडन्तको स्वाद चखाउन उनी सक्षम छन् ।" हेर, कसरी हामी विभिन्न तरिकाले चिह्नहरूको (प्रमाणहरूको) वर्णन गर्छौं ताकि तिनीहरू बुझ्न सकून् ।

وَكَذَّبَ بِهٖ قَوْمُكَ وَهُوَ الْحَقُّ ۭ قُلْ لَّسْتُ عَلَيْكُمْ بِوَكِيْلٍ ﴿٦٦﴾

६७. अनि तिम्रा मानिसहरूले यसलाई अस्वीकार गरेका छन्, वस्तुतः यो सत्य रहेको छ । तिमी भन, "म तिमीहरूको संरक्षक होइन ।"

لِكُلِّ نَبَاٍ مُّسْتَقَرٌّ ۡ وَّسَوْفَ تَعْلَمُوْنَ ﴿٦٧﴾

६८. हरेक भविष्यवाणीका निम्ति एउटा निर्धारित समय रहेको छ; तथा शीघ्र नै तिमीहरूलाई ज्ञात हुनेछ ।

وَاِذَا رَاَيْتَ الَّذِيْنَ يَخُوْضُوْنَ فِيْٓ اٰيٰتِنَا فَاَعْرِضْ عَنْهُمْ حَتّٰى يَخُوْضُوْا فِيْ حَدِيْثٍ غَيْرِهٖ ۭ وَاِمَّا يُنْسِيَنَّكَ الشَّيْطٰنُ فَلَا تَقْعُدْ بَعْدَ الذِّكْرٰى مَعَ الْقَوْمِ الظّٰلِمِيْنَ ﴿٦٨﴾

६९. तथा जब तिमीले तिनीहरूलाई हाम्रा चिह्नहरूका सम्बन्धमा व्यर्थ वार्तालाप गरेको देख्छौ, तब तिनीहरूबाट तिमी तबसम्म अलग्ग बस जबसम्म तिनीहरू त्यस विषयलाई छाडी अन्य वार्तालापमा व्यस्त हुँदैनन् । तथा यदि सैतानले तिमीहरूलाई भुलायो भने याद आउनासाथ अन्यायकारी व्यक्तिहरूसँग बस्न छाडिदेऊ ।

وَمَا عَلَى الَّذِيْنَ يَتَّقُوْنَ مِنْ حِسَابِهِمْ مِّنْ شَيْءٍ وَّلٰكِنْ ذِكْرٰى لَعَلَّهُمْ يَتَّقُوْنَ ﴿٦٩﴾

७०. तथा सत्यनिष्ठ व्यक्तिहरू तिनीहरूका निम्ति जवाफदेही छैनन्, परन्तु तिनीहरूलाई उपदेश दिनु (चाहिँ तिनको कर्तव्य रहेको छ) ताकि तिनीहरू (अल्लाहसँग) डराऊन् ।

وَذَرِ الَّذِيْنَ اتَّخَذُوْا دِيْنَهُمْ لَعِبًا وَّلَهْوًا وَّغَرَّتْهُمُ الْحَيٰوةُ الدُّنْيَا وَذَكِّرْ بِهٖٓ اَنْ تُبْسَلَ نَفْسٌۢ بِمَا كَسَبَتْ ۖ لَيْسَ

७१. तथा ती व्यक्तिहरूलाई तिमी छाडिदेऊ जसले आफ्नो धर्मलाई एउटा खेल र आमोद-प्रमोदस्वरूप बनाएका छन्, तथा साँसारिक जीवनले तिनीहरूलाई अल्मल्याएको (धोकामा पारेको) छ । तथा

* उक्त यल्बिसाकुम् ( يَلْبِسَكُمْ ) अभिव्यक्तिले एउटा स्थायीरूपमा टाँसिने र वस्त्रस्वरूप अङ्गको एउटा अंश बन्ने महासङ्कटको (शाब्दिक) रूप दर्शाउँछ । अतः केही स्थायी रूपमा प्रयोग हुने अभिव्यक्तिको प्रयोग विश्वस्त अनुवादको तकाजा रहेको छ ।

لَهَا مِنْ دُوْنِ اللّٰهِ وَلِيٌّ وَّلَا شَفِيْعٌ ۚ وَاِنْ تَعْدِلْ كُلَّ عَدْلٍ لَّا يُؤْخَذْ مِنْهَا ۗ اُولٰٓئِكَ الَّذِيْنَ اُبْسِلُوْا بِمَا كَسَبُوْا ۚ لَهُمْ شَرَابٌ مِّنْ حَمِيْمٍ وَّعَذَابٌ اَلِيْمٌۢ بِمَا كَانُوْا يَكْفُرُوْنَ ﴿٧٠﴾

(मानिसहरूलाई) त्यसद्वारा उपदेश देऊ ताकि कुनै आत्मालाई त्यसको कमाइका कारण विनाश नगरियोस् । त्यसका निम्ति अल्लाहबाहेक न कुनै सहयोगी हुनेछ न सिफारिसकर्ता नै, तथा यदि उसले जस्तै प्रकारको क्षतिपूर्ति दिए पनि उसबाट त्यो स्वीकार गरिनेछैन । यिनीहरू त्यस्ता हुन् जसलाई तिनको आफ्नो कियाकलापको कारण विनाश गरियो । तिनीहरूलाई तिनका अविश्वासका कारण पिउनका निम्ति उम्लंदो पानी तथा पीडादायक दण्ड मिल्नेछ

قُلْ اَنَدْعُوْا مِنْ دُوْنِ اللّٰهِ مَا لَا يَنْفَعُنَا وَلَا يَضُرُّنَا وَنُرَدُّ عَلٰٓى اَعْقَابِنَا بَعْدَ اِذْ هَدٰىنَا اللّٰهُ كَالَّذِى اسْتَهْوَتْهُ الشَّيٰطِيْنُ فِى الْاَرْضِ حَيْرَانَ ۖ لَهٗٓ اَصْحٰبٌ يَّدْعُوْنَهٗٓ اِلَى الْهُدَى ائْتِنَا ۗ قُلْ اِنَّ هُدَى اللّٰهِ هُوَ الْهُدٰى ۗ وَاُمِرْنَا لِنُسْلِمَ لِرَبِّ الْعٰلَمِيْنَ ﴿٧١﴾

७२. तिमी भन, ""के अल्लाहलाई छाडी हामी त्यसलाई पुकारौं जसले न त कहिले हाम्रो फाइदा गर्नसक्छ न त हाम्रो हानि नै ?" तथा के हामीलाई अल्लाहले सन्मार्ग प्रदर्शन गरेपश्चात् त्यस व्यक्तिभैँ उल्टो पाउ (अधोगतितिर) फर्काइयोस् जसलाई दुष्टहरूले बहकाएर संसारमा अल्मलिन छाडिदिएका हुन्, (तथा) उसका केही यस्ता साथीहरू (पनि) रहून् जसले उसलाई मार्ग प्रदर्शनका निम्ति "हामीतर्फ आउ" (भनी) बोलाऊन् ?" तिमी भन: "निश्चय नै, केवल अल्लाहको मार्गदर्शन नै मार्गदर्शन हो तथा हामीलाई सम्पूर्ण ब्रह्माण्डका प्रतिपालकका आज्ञाकारी बन्ने आदेश दिइएको छ ।"

وَاَنْ اَقِيْمُوا الصَّلٰوةَ وَاتَّقُوْهُ ۗ وَهُوَ الَّذِيْٓ اِلَيْهِ تُحْشَرُوْنَ ﴿٧٢﴾

७३. "तथा (हामीलाई) नमाज अनुष्ठान गर्ने र उनीप्रति डराउने (आदेश दिइएको छ); तथा ती उनी नै हुन् जसतर्फ तिमीहरूलाई एकत्रित गरिनेछ ।"

وَهُوَ الَّذِيْ خَلَقَ السَّمٰوٰتِ وَالْاَرْضَ بِالْحَقِّ ۗ وَيَوْمَ يَقُوْلُ كُنْ فَيَكُوْنُ ۚ۬

७४. तथा ती उनी नै हुन् जसले आकाशमण्डल र पृथ्वीलाई न्यायसङ्गत सिर्जना गरेका छन्; तथा त्यसदिन उनले

भन्नेछन्, "भएस् !," तब त्यो हुनजान्छ* । उनको वाणी नितान्त सत्य रहेको छ र त्यसदिन जब उनले साम्राज्य कायम हुनेछ जब नरसिङ्गा फुकिनेछ (उनी नै) अदृश्य तथा दृश्य कुराहरूका ज्ञाता हुन् । तथा उनी सर्वज्ञानी, सर्वज्ञाता छन् ।

قَوْلُهُ الْحَقُّ ۚ وَلَهُ الْمُلْكُ يَوْمَ يُنفَخُ فِي الصُّورِ ۚ عَالِمُ الْغَيْبِ وَالشَّهَادَةِ ۚ وَهُوَ الْحَكِيمُ الْخَبِيرُ ﴿٧٣﴾

७५. अनि (त्यस समयको स्मरण गर) जब इब्राहिमले आफ्ना पिता आजरलाई भने: के तपाई मूर्तिहरूलाई उपस्यको रूपमा लिनुहुन्छ? निश्चय नै म त तपाईंलाई र तपाईंका मानिसहरूलाई स्पष्ट रूपमा गल्ती गर्ने मानिसहरू (भन्ने) ठान्छु ।

وَإِذْ قَالَ إِبْرَاهِيمُ لِأَبِيهِ آزَرَ أَتَتَّخِذُ أَصْنَامًا آلِهَةً ۖ إِنِّي أَرَاكَ وَقَوْمَكَ فِي ضَلَالٍ مُّبِينٍ ﴿٧٤﴾

७६. यसरी हामीले इब्राहिमलाई आकाशमण्डल र पृथ्वीको साम्राज्य देखाएका थियौं ताकि (उनी राम्ररी सन्मार्गगामी बन्न सकून्) तथा आफ्ना आस्थाप्रति प्रतिवद्ध व्यक्तिहरूमध्येका बन्न सकून् ।

وَكَذَٰلِكَ نُرِي إِبْرَاهِيمَ مَلَكُوتَ السَّمَاوَاتِ وَالْأَرْضِ وَلِيَكُونَ مِنَ الْمُوقِنِينَ ﴿٧٥﴾

७७. त्यसपछि जब उनलाई रात्रिको अन्धकारले घेऱ्यो, उनले एउटा तारा देखे । उनले भने: "यिनी नै मेरा प्रतिपालक हुन् !" परन्तु जब त्यो अदृश्य भयो, उनले भने: "मअस्त हुने वस्तुहरूलाई मन पराउँदिन ।"

فَلَمَّا جَنَّ عَلَيْهِ اللَّيْلُ رَأَىٰ كَوْكَبًا ۖ قَالَ هَٰذَا رَبِّي ۖ فَلَمَّا أَفَلَ قَالَ لَا أُحِبُّ الْآفِلِينَ ﴿٧٦﴾

७८. त्था जब उनले प्रकाशमान चन्द्रमालाई देखे, उनले भने: "यिनी नै मेरा प्रतिपालक हुन् ।" परन्तु जब त्यो अस्त भयो, उनले भने, "यदि मेरा प्रतिपालकले मेरो मार्गप्रदर्शन नगरेका भए म अवश्य पथभ्रष्ट व्यक्तिहरूमध्येको हुने छु ।"

فَلَمَّا رَأَى الْقَمَرَ بَازِغًا قَالَ هَٰذَا رَبِّي ۖ فَلَمَّا أَفَلَ قَالَ لَئِن لَّمْ يَهْدِنِي رَبِّي لَأَكُونَنَّ مِنَ الْقَوْمِ الضَّالِّينَ ﴿٧٧﴾

७९. त्था जब उनले ज्योतिर्मय सूर्योदय

فَلَمَّا رَأَى الشَّمْسَ بَازِغَةً قَالَ هَٰذَا رَبِّي

---

* उक्त "भएस् ! तब त्यो हुनजान्छ" 'कुन् फयकून्' (كُن فَيَكُونُ) अभिव्यक्तिले शून्यताबाट अकस्मात अस्तित्वमा परिवर्तन हुनु बुझाउँदैन । यसको अर्थ वास्तवमा अल्लाहको इच्छाको (त्यो) क्षण हो, (जब) उनको इच्छाले एउटा आकार धारण गर्न लाग्छ तथा अन्तमा त्यो उनले जस्तो इच्छा गर्छन् त्यस्तै हुन जान्छ ।

هٰذَآ اَكۡبَرُ ۚ فَلَمَّآ اَفَلَتۡ قَالَ يٰقَوۡمِ اِنِّيۡ بَرِيۡٓءٌ مِّمَّا تُشۡرِكُوۡنَ ﴿٧٨﴾

भएको देखे, तब उनले भने, "यिनी नै मेरा प्रतिपालक हुन्, यिनी त सबैभन्दा ठूला छन् ।" परन्तु जब त्यो अस्त भयो, उले भने, "हे मेरा मानिसहरू हो, जसलाई तिमीहरू (अल्लाहका) साझेदार बनाउँछौं त्यसबाट म पूर्णरूपले पृथक रहेको छु ।"

اِنِّيۡ وَجَّهۡتُ وَجۡهِيَ لِلَّذِيۡ فَطَرَ السَّمٰوٰتِ وَالۡاَرۡضَ حَنِيۡفًا وَّمَاۤ اَنَا مِنَ الۡمُشۡرِكِيۡنَ ﴿٧٩﴾

८०. "मैले आफ्नो मुहार उनैतर्फ लगाएको छु सदा (अल्लाहतर्फ) झुक्ने (व्यक्ति) बनी जसले आकाशमण्डल र पृथ्वीको सृष्टि गरे, तथा म ती व्यक्तिहरूमध्येको होइन जसले (अल्लाहका) साझेदार बनाउने गर्छन् ।"

وَحَآجَّهٗ قَوۡمُهٗ ؕ قَالَ اَتُحَآجُّوۡٓنِّيۡ فِي اللّٰهِ وَقَدۡ هَدٰىنِ ؕ وَلَاۤ اَخَافُ مَا تُشۡرِكُوۡنَ بِهٖۤ اِلَّاۤ اَنۡ يَّشَآءَ رَبِّيۡ شَيۡـــًٔا ؕ وَسِعَ رَبِّيۡ كُلَّ شَيۡءٍ عِلۡمًا ؕ اَفَلَا تَتَذَكَّرُوۡنَ ﴿٨٠﴾

८१. त्था उनका मानिसहरूले उनीसँग तर्क वितर्क गरे । उनले भने: "के तिमीहरू मसँग उनले (अल्लाहले) मलाई सन्मार्ग प्रदान गरेका भए पनि अल्लाहका सम्बन्धमा तर्क-विर्तक गर्छौ? जबसम्म मेरा प्रतिपालकको कुनै इच्छा हुँदैन म त्यसदेखि डराउँदिन, जसलाई तिमीहरू उनको भागीदार बनाउँछौ । मेरा प्रतिपालकले सम्पूर्ण वस्तुहरूलाई आफ्ना ज्ञानमा समाविष्ट गरेका छन् तथापि के तिमीहरू उपदेश लिंदैनौ ?

وَكَيۡفَ اَخَافُ مَاۤ اَشۡرَكۡتُمۡ وَلَا تَخَافُوۡنَ اَنَّكُمۡ اَشۡرَكۡتُمۡ بِاللّٰهِ مَا لَمۡ يُنَزِّلۡ بِهٖ عَلَيۡكُمۡ سُلۡطٰنًا ؕ فَاَيُّ الۡفَرِيۡقَيۡنِ اَحَقُّ بِالۡاَمۡنِ ۚ اِنۡ كُنۡتُمۡ تَعۡلَمُوۡنَ ﴿٨١﴾

८२. "जब तिमीहरू बिना अधिकार त्यस वस्तुलाई अल्लाहको भागीदार बनाउनबाट डराउँदैनौ भने जसलाई तिमीहरू अल्लाहको भागीदार बनाउंछौ म त्यस वस्तुप्रति कसरी डराउन सक्छु र?" यदि वास्तवमै तिमीहरूलाई थाहा छ भने दुई समूहमध्ये कुनचाहिँ संरक्षणको बढी हकदार छ त?

اَلَّذِيۡنَ اٰمَنُوۡا وَلَمۡ يَلۡبِسُوۡۤا اِيۡمَانَهُمۡ بِظُلۡمٍ اُولٰۤـئِكَ لَهُمُ الۡاَمۡنُ وَهُمۡ مُّهۡتَدُوۡنَ ﴿٨٢﴾

८३. ती व्यक्तिहरू जो विश्वासी छन् तथा आफ्नो विश्वासलाई अन्यायमिश्रण हुन दिँदैनन्, तिनीहरूलाई नै शान्ति प्राप्त हुनेछ । तथा यिनीहरू नै सन्मार्ग प्राप्त हुन् ।

وَتِلۡكَ حُجَّتُنَاۤ اٰتَيۡنٰهَاۤ اِبۡرٰهِيۡمَ عَلٰى

८४. तथा त्यो हाम्रो तर्क हो जुन

قَوْمِهِۦ ۚ نَرْفَعُ دَرَجَٰتٍ مَّن نَّشَآءُ ۗ إِنَّ رَبَّكَ حَكِيمٌ عَلِيمٌ ﴿٨٣﴾

हामीले इब्राहिमलाई उनका मानिसहरूविरुद्ध प्रदान गरेका थियौं । हामी जसलाई चाहन्छौं पदोन्नति प्रदान गर्छौं । तिम्रा प्रतिपालक वास्तवमै तत्त्वज्ञ, सर्वज्ञ छन् ।

وَوَهَبْنَا لَهُۥٓ إِسْحَٰقَ وَيَعْقُوبَ ۚ كُلًّا هَدَيْنَا ۚ وَنُوحًا هَدَيْنَا مِن قَبْلُ ۖ وَمِن ذُرِّيَّتِهِۦ دَاوُۥدَ وَسُلَيْمَٰنَ وَأَيُّوبَ وَيُوسُفَ وَمُوسَىٰ وَهَٰرُونَ ۚ وَكَذَٰلِكَ نَجْزِى ٱلْمُحْسِنِينَ ﴿٨٤﴾

८५. तथा हामीले उनलाई आइज्याक (इस्हाक) र याकूब प्रदान गऱ्यौं; प्रत्येकलाई हामीले सन्मार्ग प्रदर्शन गरेका थियौं, तथा त्यसअघि हामीले नूहलाई सन्मार्ग प्रदर्शन गरेका थियौं तथा उनका सन्तानहरूमध्ये दाऊद र सुलेमान र आय्युब र युसुफ र मूसा तथा हारुनलाई (पनि) । यस प्रकार हामी तिनीहरुलाई प्रतिदान प्रदान गर्ने गर्छौं जो सत्कर्मी रहेका छन् ।

وَزَكَرِيَّا وَيَحْيَىٰ وَعِيسَىٰ وَإِلْيَاسَ ۖ كُلٌّ مِّنَ ٱلصَّٰلِحِينَ ﴿٨٥﴾

८६. तथा (हामीले) जकरिचया र यह्या (John) र इसा तथा इल्यासलाई (सन्मार्ग प्रदर्शन गरेका थियौं); (तिनीहरूमध्ये) हरेक सदगुण सम्पन्न थिए ।

وَإِسْمَٰعِيلَ وَٱلْيَسَعَ وَيُونُسَ وَلُوطًا ۚ وَكُلًّا فَضَّلْنَا عَلَى ٱلْعَٰلَمِينَ ﴿٨٦﴾

८७. तथा हामीले इस्माईल र यलिसा (यसाआ) र यूनुस तथा लूतलाई (पनि सन्मार्ग प्रदान गरेका थियौं), तथा ती प्रत्येकलाई हामीले मानिसहरूमाथि प्राधान्यता प्रदान गरेका थियौं ।

وَمِنْ ءَابَآئِهِمْ وَذُرِّيَّٰتِهِمْ وَإِخْوَٰنِهِمْ ۖ وَٱجْتَبَيْنَٰهُمْ وَهَدَيْنَٰهُمْ إِلَىٰ صِرَٰطٍ مُّسْتَقِيمٍ ﴿٨٧﴾

८८. तथा (हामीले) तिनीहरूका पुर्खा र तिनीहरूका सन्तान तथा तिनीहरूका भाइहरूमध्ये केहीलाई (प्राधान्यता प्रदान गरेका थियौं), तथा हामीले तिनीहरूलाई चुनेका थियौं तथा तिनीहरूलाई सन्मार्ग प्रदर्शन गरेका थियौं ।

ذَٰلِكَ هُدَى ٱللَّهِ يَهْدِى بِهِۦ مَن يَشَآءُ مِنْ عِبَادِهِۦ ۚ وَلَوْ أَشْرَكُوا۟ لَحَبِطَ عَنْهُم مَّا كَانُوا۟ يَعْمَلُونَ ﴿٨٨﴾

८९. अल्लाहको मार्गदर्शन यही हो । अल्लाहले आफ्ना सेवकहरूमध्ये जसलाई चाहन्छन् उसैलाई सन्मार्ग प्रदर्शन गर्छन् । तथा यदि तिनीहरूले उनलाई छाडी अन्य कसैको उपासना गरेका भए निश्चय नै तिनीहरूको सम्पूर्ण कमाइ तिनीहरूका

निम्ति व्यर्थ हुने थियो ।

९०. यिनीहरू नै ती व्यक्तिहरू हुन् जसलाई हामीले पुस्तक तथा निर्णयशक्ति र नबीत्व (सिद्धत्व) प्रदान गरेका थियौं । परन्तु यदि यी -मानिसहरू) तिनीहरूप्रति कृतघ्न रहेमा, (केही चिन्ता छैन), किनभने अब हामीले तिनलाई यस्ता व्यक्तिहरूका जिम्मा लगाएकाछौं जो तिनीहरूप्रति कृतघ्न छैनन् ।

أُولَٰٓئِكَ الَّذِينَ آتَيْنَٰهُمُ الْكِتَٰبَ وَالْحُكْمَ وَالنُّبُوَّةَ ۚ فَإِن يَكْفُرْ بِهَا هَٰٓؤُلَآءِ فَقَدْ وَكَّلْنَا بِهَا قَوْمًا لَّيْسُوا بِهَا بِكَٰفِرِينَ ﴿٩٠﴾

९१. यिनीहरू नै ती व्यक्तिहरू हुन् जसलाई अल्लाहले सन्मार्ग प्रदर्शन गरे, अतः तिमी तिनीहरूको मार्गदर्शनको अनुसरण गर । तिमी भनः "म तिमीहरूबाट यसका निम्ति कुनै पारितोषिकको माग गर्दिन । यो त सम्पूर्ण मानवजातिका निम्ति केवल उपेदशबाहेक केही होइन ।

أُولَٰٓئِكَ الَّذِينَ هَدَى اللَّهُ ۖ فَبِهُدَىٰهُمُ اقْتَدِهْ ۗ قُل لَّآ أَسْـَٔلُكُمْ عَلَيْهِ أَجْرًا ۖ إِنْ هُوَ إِلَّا ذِكْرَىٰ لِلْعَٰلَمِينَ ﴿٩١﴾

९२. तथा तिनीहरू अल्लाहको (त्यस्तो) सम्मान गर्नमा असमर्थ रहे जस्तो उनको सम्मान गर्नु पर्थ्यो जब तिनीहरुले भने, "अल्लाहले कुनै मानिसप्रति केही अवतीर्ण गरेका छैनन्" तिमी भन "मानिसहरूका निम्ति मार्गदर्शन र ज्योतिस्वरूप जुन पुस्तक मूसाले ल्याएका थिए त्यो पुस्तक कसले अवतीर्ण गरेको थियो त? यद्यपि तिमीहरु जुनकुरा व्यक्त गर्छौ त्यसलाई तिमीहरू कागजको टुकासरह व्यवहार गर्छौ भने त्यसबाट धेरैजसो चाहिँ लुकाउने गर्छौ; तथा तिमीहरूलाई त्यो कुरा सिकाइएको छ जुन कुराको न तिमीहरूलाई न त तिमीहरूका पितृहरूलाई ज्ञान थियो ।" तिमी भनः"अल्लाह" त्यसपछि तिनीहरूलाई तिनका (व्यर्थ) वार्तालापमा मग्न रहन देऊ।

وَمَا قَدَرُوا اللَّهَ حَقَّ قَدْرِهِۦٓ إِذْ قَالُوا مَآ أَنزَلَ اللَّهُ عَلَىٰ بَشَرٍ مِّن شَيْءٍ ۗ قُلْ مَنْ أَنزَلَ الْكِتَٰبَ الَّذِي جَآءَ بِهِۦ مُوسَىٰ نُورًا وَهُدًى لِّلنَّاسِ ۖ تَجْعَلُونَهُۥ قَرَاطِيسَ تُبْدُونَهَا وَتُخْفُونَ كَثِيرًا ۖ وَعُلِّمْتُم مَّا لَمْ تَعْلَمُوٓا أَنتُمْ وَلَآ ءَابَآؤُكُمْ ۖ قُلِ اللَّهُ ۖ ثُمَّ ذَرْهُمْ فِي خَوْضِهِمْ يَلْعَبُونَ ﴿٩٢﴾

९३. तथा यो एउटा यस्तो पुस्तक हो जसलाई हामीले वरदानपूर्ण अवतीर्ण गरेकाछौं जुन त्यसको पूर्ववर्त्तीको पूरकस्वरूप रहेको

وَهَٰذَا كِتَٰبٌ أَنزَلْنَٰهُ مُبَارَكٌ مُّصَدِّقُ الَّذِي بَيْنَ يَدَيْهِ وَلِتُنذِرَ أُمَّ

الْقُرَىٰ وَمَنْ حَوْلَهَا ۚ وَالَّذِينَ يُؤْمِنُونَ بِالْآخِرَةِ يُؤْمِنُونَ بِهِ ۖ وَهُمْ عَلَىٰ صَلَاتِهِمْ يُحَافِظُونَ ﴿٩٢﴾

छ ताकि तिमीलाई नगरहरूकी मातृ तथा तिनका सामीप्यमा रहेका मानिसहरूलाई सावधान गर । तथा जसले परलोकप्रति विश्वास गर्छन् ती व्यक्तिहरू यसप्रति (पनि) विश्वास गर्छन् । तथा तिनीहरू आफ्नो नमाजको ध्यान राख्ने गर्छन् ।

وَمَنْ أَظْلَمُ مِمَّنِ افْتَرَىٰ عَلَى اللَّهِ كَذِبًا أَوْ قَالَ أُوحِيَ إِلَيَّ وَلَمْ يُوحَ إِلَيْهِ شَيْءٌ وَمَن قَالَ سَأُنزِلُ مِثْلَ مَا أَنزَلَ اللَّهُ ۗ وَلَوْ تَرَىٰ إِذِ الظَّالِمُونَ فِي غَمَرَاتِ الْمَوْتِ وَالْمَلَائِكَةُ بَاسِطُو أَيْدِيهِمْ أَخْرِجُوا أَنفُسَكُمُ ۖ الْيَوْمَ تُجْزَوْنَ عَذَابَ الْهُونِ بِمَا كُنتُمْ تَقُولُونَ عَلَى اللَّهِ غَيْرَ الْحَقِّ وَكُنتُمْ عَنْ آيَاتِهِ تَسْتَكْبِرُونَ ﴿٩٣﴾

९४. तथा त्यो व्यक्तिभन्दा अधिक अन्यायकारी को हुनसक्छ जसले अल्लाहका विरुद्ध मिथ्या गढ्ने गर्छ? अथवा "मप्रति यो आकाशवाणी गरिएको छ" भनी भन्छ, वस्तुतः उसप्रति कुनै आकाशवाणी भने भएको हुन्न; तथा जसले भन्छ, "जुन कुरा अल्लाहले अवतीर्ण गरेका छन् म पनि अवश्य त्यस्तैकुरा अवतीर्ण गर्नेछु ।" तथा यदि तिमीले त्यस क्षणलाई देख्न मात्र सक्थ्यौ भने, जब अन्यायकारीहरू मृत्युवेदनामा हुनेछन् र फरिस्ताहरू आफ्ना हात फैलाउँदै भन्नेछन्, "आफ्नो प्राण त्याग अल्लाहका विरुद्ध जुन मिथ्या तिमीहरू गढ्ने गर्थ्यौ तथा उनका चिह्नहरूबाट अहंकारका साथ जसरी विमुख हुने गर्थ्यौ त्यसैका कारण आज तिमीहरूलाई अपमानजनक दण्ड मिल्नेछ ।"

وَلَقَدْ جِئْتُمُونَا فُرَادَىٰ كَمَا خَلَقْنَاكُمْ أَوَّلَ مَرَّةٍ وَتَرَكْتُم مَّا خَوَّلْنَاكُمْ وَرَاءَ ظُهُورِكُمْ ۖ وَمَا نَرَىٰ مَعَكُمْ شُفَعَاءَكُمُ الَّذِينَ زَعَمْتُمْ أَنَّهُمْ فِيكُمْ شُرَكَاءُ ۚ لَقَد تَّقَطَّعَ بَيْنَكُمْ وَضَلَّ عَنكُم مَّا كُنتُمْ تَزْعُمُونَ ﴿٩٤﴾

९५. तथा अब तिमीहरू त्यसरी नै एक एक गरेर मेरा सामु उपस्थित भएका छौ जसरी हामीले तिमीहरूलाई पहिलोपटक पैदा गरेका थियौं, तथा जुन कुरा हामीले तिमीहरूलाई कृपास्वरूप प्रदान गरेका थियौं त्यसलाई तिमीहरूले आफु पछाडि छाडेका छौ, तथा हामी तिमीहरूका साथ तिमीहरूका ती सिफारिसकर्ताहरूलाई देख्दैनौं जसका बारेमा तिनीहरू तिमीहरूका (मामिलामा) अल्लाहका भागीदार रहेका छन् भनी तिमीहरू दावी गर्थ्यौ । अब तिमीहरूको परस्पर सम्बन्ध विच्छेद गरिएको छ तथा जुन कुराको तिमीहरू कल्पना गर्थ्यौ त्यो कुरा तिमीहरूबाट गुम्न

पुग्यो ।

إِنَّ اللّٰهَ فَالِقُ الْحَبِّ وَالنَّوٰى ۖ يُخْرِجُ
الْحَيَّ مِنَ الْمَيِّتِ وَمُخْرِجُ الْمَيِّتِ مِنَ
الْحَيِّ ۚ ذٰلِكُمُ اللّٰهُ فَأَنّٰى تُؤْفَكُونَ ﴿٩٥﴾

९६. निश्चय नै, ती अल्लाह नै हुन् जसले अन्नका दाना र खजूरका गेडालाई अङ्कुरित पार्छन् । उनले मृतकबाट जीवित निकाल्छन् तथा (उनी नै) जीवितबाट मृतक निकाल्ने गर्छन् । यिनी नै तिमीहरूका अल्लाह हुन् भने तिमीहरूलाई कता फर्काइँदैछ त?

فَالِقُ الْإِصْبَاحِ ۚ وَجَعَلَ الَّيْلَ سَكَنًا وَّ
الشَّمْسَ وَالْقَمَرَ حُسْبَانًا ۚ ذٰلِكَ تَقْدِيرُ
الْعَزِيزِ الْعَلِيمِ ﴿٩٦﴾

९७. उनी दिवालाई प्रकट गर्ने गर्छन्; तथा उनले रात्रिलाई विश्रामका निम्ति र सूर्य र चन्द्रलाई (समय) निर्धारणका निम्ति बनाएका छन् । यो सर्वशक्तिमान, सर्वज्ञको विधान हो ।

وَهُوَ الَّذِي جَعَلَ لَكُمُ النُّجُومَ
لِتَهْتَدُوا بِهَا فِي ظُلُمٰتِ الْبَرِّ وَ
الْبَحْرِ ۗ قَدْ فَصَّلْنَا الْآيٰتِ لِقَوْمٍ
يَّعْلَمُونَ ﴿٩٧﴾

९८. तथा तिनी नै हुन् जसले तिमीहरूका निम्ति ताराहरूको सृष्टि गरे ताकि तिनीहरूका मद्दतले पृथ्वी र समुद्रको घोर अन्धकारमा तिमीहरू उचित मार्ग अनुसरण गर्न सक । हामीले ज्ञानवान मानिसहरूका निम्ति विस्तृतरूपमा चिह्नहरूको व्याख्या गरिदिएका छौं ।

وَهُوَ الَّذِي أَنْشَأَكُمْ مِّنْ نَّفْسٍ
وَّاحِدَةٍ فَمُسْتَقَرٌّ وَّمُسْتَوْدَعٌ ۗ قَدْ
فَصَّلْنَا الْآيٰتِ لِقَوْمٍ يَّفْقَهُونَ ﴿٩٨﴾

९९. तथा उनी नै हुन् जसले तिमीहरूलाई एउटै ज्यानबाट सृष्टि गरे तथा (तिमीहरूका निम्ति) एउटा स्थायी घर र एउटा विश्रामगृह रहेको छ । हामीले समझदारीयुक्त व्यक्तिहरूका निम्ति विस्तृतरूपमा चिह्नहरूको व्याख्या गरिदिएका छौं ।

وَهُوَ الَّذِي أَنْزَلَ مِنَ السَّمَاءِ مَاءً ۚ
فَأَخْرَجْنَا بِهِ نَبَاتَ كُلِّ شَيْءٍ فَأَخْرَجْنَا
مِنْهُ خَضِرًا نُّخْرِجُ مِنْهُ حَبًّا مُّتَرَاكِبًا ۚ
وَمِنَ النَّخْلِ مِنْ طَلْعِهَا قِنْوَانٌ دَانِيَةٌ
وَّجَنّٰتٍ مِّنْ أَعْنَابٍ وَّالزَّيْتُونَ وَ
الرُّمَّانَ مُشْتَبِهًا وَّغَيْرَ مُتَشَابِهٍ ۗ

१००. तथा उनी नै हुन् जसले बादलबाट पानी बर्साउछन्; तथा त्यसबाट हामी हरप्रकारका उद्भिद् निकाल्छौं, तब त्यसबाट हामी हरिया घाँस-पातहरू उब्जाउँछौं जसबाट झुप्पाका झुप्पा अन्न उत्पादन गर्छौं । तथा खजुरका गाभाबाट उँधो झुण्डिएका फलका झुप्पाहरू

ٱنظُرُوٓا۟ إِلَىٰ ثَمَرِهِۦٓ إِذَآ أَثْمَرَ وَيَنْعِهِۦٓ ۚ إِنَّ فِى ذَٰلِكُمْ لَءَايَٰتٍ لِّقَوْمٍ يُؤْمِنُونَ ﴿٩٩﴾

(निस्कन्छन्)। तथा (हामी त्यसबाट) अङ्गुर, र जैतुन तथा अनारका यस्ता बगैंचाहरू (तयार गर्छौं) जुन परस्पर मिल्दाजुल्दा र भिन्न भिन्न थरिका पनि रहेका छन् । जब तिनीहरूमा फल लाग्छ र त्यो पाक्छ त्यस (प्रक्रिया) लाई हेर । विश्वास गर्ने व्यक्तिहरूका निम्ति त्यसमा निश्चय नै चिह्नहरू रहेका छन् ।

وَجَعَلُوا۟ لِلَّهِ شُرَكَآءَ ٱلْجِنَّ وَخَلَقَهُمْ ۖ وَخَرَقُوا۟ لَهُۥ بَنِينَ وَبَنَٰتٍۭ بِغَيْرِ عِلْمٍ ۚ سُبْحَٰنَهُۥ وَتَعَٰلَىٰ عَمَّا يَصِفُونَ ﴿١٠٠﴾

१०१. तथा तिनीहरूले जिनलाई अल्लाहका भागीदार बनाएका छन्, वस्तुतः उनले नै तिनीहरूलाई सृष्टि गरेका हुन् । तथा तिनीहरूले कुनै ज्ञानबिना नै मिथ्यापूर्वक उनका पुत्रहरू र पुत्रीहरू गढेका छन् । पवित्र छन् उनी तथा तिनीहरूले (उनीबारे) बयान गरेका कुराहरूभन्दा उनी (धेरै) माथि छन् ।

بَدِيعُ ٱلسَّمَٰوَٰتِ وَٱلْأَرْضِ ۖ أَنَّىٰ يَكُونُ لَهُۥ وَلَدٌ وَلَمْ تَكُن لَّهُۥ صَٰحِبَةٌ ۖ وَخَلَقَ كُلَّ شَىْءٍ ۖ وَهُوَ بِكُلِّ شَىْءٍ عَلِيمٌ ﴿١٠١﴾

१०२. आकाशमण्डल र पृथ्वीका सृष्टिकर्ता हुन् ! (जब) उनकी पत्नी नै छैनन् भने कसरी उनको पुत्र हुनसक्छ र? तथा उनले नै सम्पूर्ण वस्तुहरूको सृष्टि गरेका हुन् तथा सम्पूर्ण कुराहरूको ज्ञान उनमा रहेको छ ।

ذَٰلِكُمُ ٱللَّهُ رَبُّكُمْ ۖ لَآ إِلَٰهَ إِلَّا هُوَ ۖ خَٰلِقُ كُلِّ شَىْءٍ فَٱعْبُدُوهُ ۚ وَهُوَ عَلَىٰ كُلِّ شَىْءٍ وَكِيلٌ ﴿١٠٢﴾

१०३. यस्ता तिमीहरूका प्रतिपालक, अल्लाह हुन् । उनीबाहेक कोही उपास्य छैन्, उनी सम्पूर्ण वस्तुहरूका सृष्टिकर्ता हुन्, त्यसकारण उनकै उपासना गर । तथा उनी हरेक वस्तुका संरक्षक रहेका छन् ।

لَّا تُدْرِكُهُ ٱلْأَبْصَٰرُ وَهُوَ يُدْرِكُ ٱلْأَبْصَٰرَ ۖ وَهُوَ ٱللَّطِيفُ ٱلْخَبِيرُ ﴿١٠٣﴾

१०४. नेत्रहरू उनीसम्म पुग्न सक्दैनन् परन्तु उनी नेत्रहरुसम्म पुग्छन् । तथा उनी गूढाशय, परिज्ञाता हुन् ।

قَدْ جَآءَكُم بَصَآئِرُ مِن رَّبِّكُمْ ۖ فَمَنْ أَبْصَرَ فَلِنَفْسِهِۦ ۖ وَمَنْ عَمِىَ فَعَلَيْهَا ۚ وَمَآ أَنَا۠ عَلَيْكُم بِحَفِيظٍ ﴿١٠٤﴾

१०५. वस्तुतः तिमीहरूसमक्ष तिमीहरूका प्रतिपालकका तर्फबाट प्रमाणहरूको आगमन भइसकेको छ; अतः जसले दृष्टिगत गर्नेछ, त्यसबाट त्यसकै भलो हुनेछ; तथा जुन व्यक्ति अन्धो बन्नेछ त्यसबाट त्यसकै

हानि हुन्छ । तथा म तिमीहरूको संरक्षक होइन ।

وَكَذٰلِكَ نُصَرِّفُ الْاٰيٰتِ وَلِيَقُوْلُوْا دَرَسْتَ وَلِنُبَيِّنَهٗ لِقَوْمٍ يَّعْلَمُوْنَ ﴿١٠٥﴾

१०६. तथा यस प्रकार (सत्यको स्थापनाका निम्ति) हामी चिह्नहरूमा केही विविधता ल्याउने गर्छौं, परन्तु यसको (परिणामस्वरूप) तिनीहरू भन्छन्, "तिमीले (राम्ररी) सिकेका छौं," तथा हामी चिह्नहरूमा विविधता ल्याउँछौं ताकि हामी त्यसलाई यस्ता व्यक्तिहरुसमक्ष व्याख्या गर्नसकौं जो ज्ञानवान छन् ।

اِتَّبِعْ مَآ اُوْحِيَ اِلَيْكَ مِنْ رَّبِّكَ ۚ لَآ اِلٰهَ اِلَّا هُوَ ۚ وَاَعْرِضْ عَنِ الْمُشْرِكِيْنَ ﴿١٠٦﴾

१०७. तिम्रा प्रतिपालकका तर्फबाट जुन कुरा तिमीप्रति अवतीर्ण गरिएको छ त्यसको अनुसरण गर । उनीबाहेक अन्य कोही उपास्य छैन; तथा तिमी मूर्तिपूजकहरूबाट अलग्ग रहने गर ।

وَلَوْ شَآءَ اللّٰهُ مَآ اَشْرَكُوْا ۗ وَمَا جَعَلْنٰكَ عَلَيْهِمْ حَفِيْظًا ۚ وَمَآ اَنْتَ عَلَيْهِمْ بِوَكِيْلٍ ﴿١٠٧﴾

१०८. तथा यदि अल्लाहले आफ्नो विधान (बलपूर्वक) लागू गरेका भए तिनीहरूले (उनीसँग) देवताहरूलाई स्थापित गर्ने थिएनन् । तथा हामीले तिमीलाई तिनीहरूको संरक्षक नियुक्त गरेका छैनौं न त तिमी तिनीहरूप्रति निरीक्षक छौ ।

وَلَا تَسُبُّوا الَّذِيْنَ يَدْعُوْنَ مِنْ دُوْنِ اللّٰهِ فَيَسُبُّوا اللّٰهَ عَدْوًاۢ بِغَيْرِ عِلْمٍ ۗ كَذٰلِكَ زَيَّنَّا لِكُلِّ اُمَّةٍ عَمَلَهُمْ ۪ ثُمَّ اِلٰى رَبِّهِمْ مَّرْجِعُهُمْ فَيُنَبِّئُهُمْ بِمَا كَانُوْا يَعْمَلُوْنَ ﴿١٠٨﴾

१०९. तथा जसलाई तिनीहरू अल्लाहबाहेक पुकार्ने गर्छन्, तिनलाई तिमीहरू गाली-गलौज नगर, अन्यथा तिनीहरूले द्वेषभाव र (आफ्नो) अज्ञानताका कारण अल्लाहलाई गाली दिनेछन् । यस प्रकार हामीले हरेक जातिका निम्ति तिनीहरूको कार्य शोभनीय तुल्याएका छौं । त्यसपछि तिनीहरूले आफ्ना प्रतिपालकतर्फ फर्कनु पर्नेछ; तथा उनले तिनीहरूलाई तिनले गर्ने गरेका कार्यहरूबारे अवगत गर्नेछन् ।

وَاَقْسَمُوْا بِاللّٰهِ جَهْدَ اَيْمَانِهِمْ لَئِنْ جَآءَتْهُمْ اٰيَةٌ لَّيُؤْمِنُنَّ بِهَا ۗ قُلْ

११०. तथा तिनीहरूले अल्लाहको के दृढशपथ खाएका छन् भने यदि तिनीहरूसमक्ष कुनै चिह्नको आगमन भएमा

तिनीहरूले अवश्य त्यसप्रति विश्वास गर्नेछन् । तिमी भन, "चिह्नहरू त अवश्य नै अल्लाहका जुनाफमा छन् । परन्तु जब चिह्नहरूको आगमन हुनेछ त्यसपछि पनि तिनीहरूले विश्वास गर्नेछैनन् भन्ने कुरा तिमीहरूलाई कसले सम्भाउँछ?"

إِنَّمَا الْآيَاتُ عِندَ اللَّهِ وَمَا يُشْعِرُكُمْ أَنَّهَا إِذَا جَاءَتْ لَا يُؤْمِنُونَ ﴿١١٠﴾

१११. तथा हामी तिनीहरूका हृदयलाई र तिनीहरूको दृष्टिशक्तिलाई ठिक त्यस अवस्थातर्फ मोड्ने छौं, जुन (अवस्था) मा पहिलोपटक तिनीहरूले हाम्रा चिह्नहरूलाई अस्वीकार गरेका थिए । तथा हामी तिनीहरूलाई तिनका उल्लङ्घनीयतामा (र विकर्षणतर्फ) बरालिन छाडिदिनेछौं ।

وَنُقَلِّبُ أَفْئِدَتَهُمْ وَأَبْصَارَهُمْ كَمَا لَمْ يُؤْمِنُوا بِهِ أَوَّلَ مَرَّةٍ وَنَذَرُهُمْ فِي طُغْيَانِهِمْ يَعْمَهُونَ ﴿١١١﴾

११२. तथा यदि हामीले तिनीहरूप्रति फरिस्ताहरू अवतीर्ण गरेका भए र मृतकहरूले तिनीहरूसँग वार्ता गरेका भए तथा हामीले तिनीहरूका अगाडि सम्पूर्ण वस्तुहरू एकत्रित गरेका भए तापनि अल्लाहको (दृढ) इच्छा नरहेको भए तिनीहरूले विश्वास गर्ने थिएनन् । वस्तुतः तिनीहरूमध्ये धेरैजसो व्यक्तिहरूको व्यवहार अज्ञानतापूर्ण रहेको छ ।

وَلَوْ أَنَّنَا نَزَّلْنَا إِلَيْهِمُ الْمَلَائِكَةَ وَكَلَّمَهُمُ الْمَوْتَىٰ وَحَشَرْنَا عَلَيْهِمْ كُلَّ شَيْءٍ قُبُلًا مَّا كَانُوا لِيُؤْمِنُوا إِلَّا أَن يَشَاءَ اللَّهُ وَلَٰكِنَّ أَكْثَرَهُمْ يَجْهَلُونَ ﴿١١٢﴾

११३. तथा यसै प्रकार हामीले प्रत्येक सिद्ध (नबी) का निम्ति मानिसहरू र जिनहरूमध्ये दुष्ट प्रकृतिका व्यक्तिहरूलाई शत्रु बनाएका छौं । तिनीहरू परस्पर एक-अर्कालाई धोका दिनका निम्ति कपटपूर्ण कुराहरूको परामर्श दिन्छन्– तथा यदि तिम्रा प्रतिपालकको इच्छा (लादिएको) भए, तिनीहरूले त्यसो गर्ने थिएनन्; त्यसकारण तिमी तिनीहरूलाई तिनका मिथ्याचारिताका साथ एक्लै छाडिदेऊ

وَكَذَٰلِكَ جَعَلْنَا لِكُلِّ نَبِيٍّ عَدُوًّا شَيَاطِينَ الْإِنسِ وَالْجِنِّ يُوحِي بَعْضُهُمْ إِلَىٰ بَعْضٍ زُخْرُفَ الْقَوْلِ غُرُورًا ۚ وَلَوْ شَاءَ رَبُّكَ مَا فَعَلُوهُ ۖ فَذَرْهُمْ وَمَا يَفْتَرُونَ ﴿١١٣﴾

११४. तथा ताकि त्यसद्वारा परलोकप्रति विश्वास नगर्ने व्यक्तिहरूको हृदय त्यसैप्रति आकर्षित रहोस् तथा ताकि तिनीहरू त्यसैमा प्रसन्न रहून्, तथा ताकि जुन कुरा तिनीहरू आर्जन गरिरहेका छन् त्यसलाई (निरन्तर)

وَلِتَصْغَىٰ إِلَيْهِ أَفْئِدَةُ الَّذِينَ لَا يُؤْمِنُونَ بِالْآخِرَةِ وَلِيَرْضَوْهُ وَلِيَقْتَرِفُوا مَا هُم مُّقْتَرِفُونَ ﴿١١٤﴾

आर्जन गरिरहून् ।

११५. के म अल्लाहलाई छाडी अन्य कुनै निर्णायकको कामना गरुँ, वस्तुतः उनी नै हुन् जसले तिमीहरूप्रति स्पष्ट विवरणयुक्त पुस्तक अवतीर्ण गरेका छन्? तथा जसलाई हामीले पुस्तक प्रदान गरेका थियौं तिनीहरूलाई के थाहा छ भने यो तिमीमाथि तिम्रा प्रतिपालकककातर्फबाट सत्यका साथ अवतरित गरिएको हो । त्यसकारण तिमी सन्देह गर्ने व्यक्तिहरूमध्येको नबन ।

أَفَغَيْرَ ٱللَّهِ أَبْتَغِي حَكَمًا وَهُوَ ٱلَّذِيٓ أَنزَلَ إِلَيْكُمُ ٱلْكِتَٰبَ مُفَصَّلًا ۚ وَٱلَّذِينَ ءَاتَيْنَٰهُمُ ٱلْكِتَٰبَ يَعْلَمُونَ أَنَّهُۥ مُنَزَّلٌ مِّن رَّبِّكَ بِٱلْحَقِّ ۖ فَلَا تَكُونَنَّ مِنَ ٱلْمُمْتَرِينَ ﴿١١٤﴾

११६. तथा तिम्रा प्रतिपालकको वचन सत्य र न्यायका साथ पूर्ण भएको छ । उनका वचनलाई कसैले परिवर्तन गर्न सक्दैन; तथा उनी सर्वश्रोता, सर्वज्ञ छन् ।

وَتَمَّتْ كَلِمَتُ رَبِّكَ صِدْقًا وَعَدْلًا ۚ لَّا مُبَدِّلَ لِكَلِمَٰتِهِۦ ۚ وَهُوَ ٱلسَّمِيعُ ٱلْعَلِيمُ ﴿١١٥﴾

११७. तथा यदि तिमीले पृथ्वीमा रहने व्यक्तिहरूमध्ये वहुमतको अनुसरण गऱ्यौ भने, तिनीहरूले तिमीलाई अल्लाहका मार्गबाट पथभ्रष्ट गर्नेछन् । तिनीहरू केवल अड्कलपूर्ण कुराहरूको अनुसरण गर्छन्, तथा तिनीहरू केवल मनगढन्त कुरामा* लिप्त रहनुबाहेक केही गर्नेछैनन् ।

وَإِن تُطِعْ أَكْثَرَ مَن فِي ٱلْأَرْضِ يُضِلُّوكَ عَن سَبِيلِ ٱللَّهِ ۚ إِن يَتَّبِعُونَ إِلَّا ٱلظَّنَّ وَإِنْ هُمْ إِلَّا يَخْرُصُونَ ﴿١١٦﴾

११८. तिम्रा प्रतिपालकले निश्चय नै उनका मार्गबाट पथभ्रष्ट भएका व्यक्तिहरूलाई सर्वाधिक जान्दछन्; तथा उनी तिनीहरुलाई जुन व्यक्तिहरु सन्मार्ग प्राप्त रहेका छन् सर्वाधिक रूपमा जान्दछन्

إِنَّ رَبَّكَ هُوَ أَعْلَمُ مَن يَضِلُّ عَن سَبِيلِهِۦ ۖ وَهُوَ أَعْلَمُ بِٱلْمُهْتَدِينَ ﴿١١٧﴾

११९. यदि तिमीहरू उनका चिह्नहरूप्रति विश्वास गर्छौ भने जुन वस्तुमा अल्लाहको नाम उच्चारण गरिएको छ त्यसबाट खाऊ ।

فَكُلُوا۟ مِمَّا ذُكِرَ ٱسْمُ ٱللَّهِ عَلَيْهِ إِن كُنتُم بِـَٔايَٰتِهِۦ مُؤْمِنِينَ ﴿١١٨﴾

१२०. तथा तिमीहरूलाई के भएको छ र तिमीहरू ती वस्तुहरूबाट खादैनौ जसप्रति

وَمَا لَكُمْ أَلَّا تَأْكُلُوا۟ مِمَّا ذُكِرَ ٱسْمُ ٱللَّهِ عَلَيْهِ وَقَدْ فَصَّلَ لَكُم مَّا حَرَّمَ

---

* यख्रुसून' ( يَخْرُصُونَ ) शब्दको भावार्थ विस्तृत रहेको छ, जस्तै मनगढन्त कुराहरू अथवा भविष्यवक्तास्वरूप भविष्यवाणी गर्नु जबकि वास्तविकरूपमा भने तिनीहरू केवल व्यर्थका अनुमानहरूमा व्यस्त रहने गर्छन् ।

عَلَيْكُمْ إِلَّا مَا اضْطُرِرْتُمْ إِلَيْهِ ۗ وَإِنَّ
كَثِيرًا لَّيُضِلُّونَ بِأَهْوَائِهِم بِغَيْرِ
عِلْمٍ ۗ إِنَّ رَبَّكَ هُوَ أَعْلَمُ بِالْمُعْتَدِينَ ﴿١١٩﴾

अल्लाहको नाम उच्चारण गरिएको छ? वस्तुतः तिमीहरूका निम्ति निषिद्ध गरेका वस्तुहरूबारे उनले तिमीहरूसमक्ष स्पष्टरूपमा वर्णन गरिसकेका छन् सिवाय त्यो जसका निम्ति तिमीहरूलाई वाध्य गरिन्छ । तथा धेरै यस्ता व्यक्तिहरू छन् जसले अज्ञानताका कारण आफ्ना निकृष्ट चाहनाद्वारा निश्चय नै (अन्य) व्यक्तिहरूलाई कुमार्गतर्फ डोऱ्याउँछन् । निश्चितरूपमा तिम्रा प्रतिपालक उल्लङ्घनकारीहरूलाई राम्ररी चिन्दछन् ।

وَذَرُوا ظَاهِرَ الْإِثْمِ وَبَاطِنَهُ ۚ إِنَّ
الَّذِينَ يَكْسِبُونَ الْإِثْمَ سَيُجْزَوْنَ
بِمَا كَانُوا يَقْتَرِفُونَ ﴿١٢٠﴾

१२१. तथा पापबाट बच, चाहे त्यो प्रकाश्य पाप होस् अथवा अप्रकाश्य, निश्चय नै जसले पाप कमाउँछन् ती व्यक्तिहरूलाई तिनीहरूको कमाइको प्रतिदान प्रदान गरिनेछ

وَلَا تَأْكُلُوا مِمَّا لَمْ يُذْكَرِ اسْمُ اللَّهِ
عَلَيْهِ وَإِنَّهُ لَفِسْقٌ ۗ وَإِنَّ الشَّيَاطِينَ
لَيُوحُونَ إِلَىٰ أَوْلِيَائِهِمْ لِيُجَادِلُوكُمْ ۖ
وَإِنْ أَطَعْتُمُوهُمْ إِنَّكُمْ لَمُشْرِكُونَ ﴿١٢١﴾

१२२. तथा ती वस्तुहरूबाट तिमीहरू खाने नगर जसमा अल्लाहको नाम उच्चारण गरिएको छैन, त्यसो गर्नु निश्चय नै अवज्ञा हो । तथा दुष्प्रकृतियुक्त व्यक्तिहरू निश्चय नै आफ्ना मित्रहरूलाई तिमीहरूसँग लडाउनका निम्ति उक्साउँछन् । तथा यदि तिमीहरूले तिनीहरूको आज्ञापालन गऱ्यौ भने तिमीहरू अवश्य नै अनेकाश्वरवादी बन्नेछौ ।

أَوَمَن كَانَ مَيْتًا فَأَحْيَيْنَاهُ وَجَعَلْنَا لَهُ
نُورًا يَمْشِي بِهِ فِي النَّاسِ كَمَن مَّثَلُهُ
فِي الظُّلُمَاتِ لَيْسَ بِخَارِجٍ مِّنْهَا ۚ
كَذَٰلِكَ زُيِّنَ لِلْكَافِرِينَ مَا كَانُوا
يَعْمَلُونَ ﴿١٢٢﴾

१२३. के त्यो व्यक्ति जो मृत थियो र त्यसलाई हामीले जीवन दान गऱ्यौं तथा त्यसका निम्ति एउटा यस्तो प्रकाश बनायौं जसद्वारा त्यो व्यक्ति अन्य मानिसहरूबीच हिँडडुल गर्ने गर्छ, त्यस व्यक्तिअनुरूप हुन सक्छ जो घोर अन्धकारमा रहन्छ र त्यहाँबाट कदापि निस्कन सक्दैन? यस कारण अविश्वासीहरूका दृष्टिमा तिनीहरूका कार्यहरू उनीहरूका लागि शोभनीय तुल्याइएको छ ।

وَكَذَٰلِكَ جَعَلْنَا فِي كُلِّ قَرْيَةٍ
أَكَابِرَ مُجْرِمِيهَا لِيَمْكُرُوا فِيهَا ۖ وَمَا

१२४. तथा त्यस प्रकार हामीले हरेक नगरमा त्यहाँका पापी व्यक्तिहरूका

يَمْكُرُوْنَ اِلَّا بِاَنْفُسِهِمْ وَ مَا يَشْعُرُوْنَ ⑫

नेताहरूलाई* त्यहाँ (सत्यका विरोधमा) षडयन्त्र गर्न छाडिदियौं; तथा तिनीहरू केवल आफ्नै आत्माविरुद्ध षड्यन्त्र गर्छन्; परन्तु तिनीहरू बुझ्दैनन् ।

وَ اِذَا جَآءَتْهُمْ اٰيَةٌ قَالُوْا لَنْ نُّؤْمِنَ حَتّٰى نُؤْتٰى مِثْلَ مَآ اُوْتِيَ رُسُلُ اللّٰهِ ؕ اَللّٰهُ اَعْلَمُ حَيْثُ يَجْعَلُ رِسٰلَتَهٗ ؕ سَيُصِيْبُ الَّذِيْنَ اَجْرَمُوْا صَغَارٌ عِنْدَ اللّٰهِ وَعَذَابٌ شَدِيْدٌۢ بِمَا كَانُوْا يَمْكُرُوْنَ ⑫

१२५. तथा जब तिनीहरूसमक्ष कुनै चिह्नको आगमन हुन्छ तब तिनीहरू भन्छन्, "जबसम्म हामीलाई त्यस्तै कुरा प्रदान गरिदैन जुन कुरा अल्लाहका सन्देशवाहकहरूलाई प्रदान गरिएको छ, हामी कदापि विश्वास गर्नेछैनौं? आफ्नो सन्देश कहाँ स्थापना गर्नुपर्छ भन्ने कुरा अल्लाहले सर्बाधिक जान्दछन् । निश्चय नै अपराधीहरूलाई तिनका षडयन्त्रका कारण अल्लाहका सम्मुख अपमान तथा कठोर दण्ड मिल्नेछ ।

فَمَنْ يُّرِدِ اللّٰهُ اَنْ يَّهْدِيَهٗ يَشْرَحْ صَدْرَهٗ لِلْاِسْلَامِ ۚ وَمَنْ يُّرِدْ اَنْ يُّضِلَّهٗ يَجْعَلْ صَدْرَهٗ ضَيِّقًا حَرَجًا كَاَنَّمَا يَصَّعَّدُ فِي السَّمَآءِ ؕ كَذٰلِكَ يَجْعَلُ اللّٰهُ الرِّجْسَ عَلَى الَّذِيْنَ لَا يُؤْمِنُوْنَ ⑫

१२६. यसरी, जसलाई अल्लाहले सन्मार्ग प्रदर्शन गर्न चाहन्छन् त्यसको हृदयलाई इस्लाम (ग्रहण) का निम्ति खोलिदिन्छन् (तथा जसलाई) उनले पथभ्रष्ट गर्न चाहन्छन् त्यसको हृदयलाई (भने) सङ्कीर्ण तुल्याइदिन्छन्, मानौं त्यो व्यक्ति ठाडो (उच्च स्थान) तर्फ चढिरहेछ । यसै प्रकार अल्लाह अविश्वासी व्यक्तिहरूमाथि दण्ड बर्साउने गर्छन् ।

وَ هٰذَا صِرَاطُ رَبِّكَ مُسْتَقِيْمًا ؕ قَدْ فَصَّلْنَا الْاٰيٰتِ لِقَوْمٍ يَّذَّكَّرُوْنَ ⑫

१२७. तथा यही नै तिम्रा प्रतिपालकको त्यो मार्ग हो -जसले) सिधा -उनीसम्म पुऱ्याउँछ) । हामीले निश्चय नै परामर्श प्राप्त गर्ने व्यक्तिहरूका निम्ति चिह्नहरूको वर्णन स्पष्टरूपमा गरिदिएका छौं ।

---

* उक्त 'अकाबिर मुज्‌रिमीहा' ( اَكٰبِرَ مُجْرِمِيْهَا ) अभिव्यक्तिको शाब्दिक अर्थ हो 'त्यस नगरका पापीहरूमध्येका ठूलाबडा व्यक्तिहरू' यहाँ 'ठूलाबडा' भन्नुको तात्पर्य ती व्यक्तिहरू हुन् जसको पापमा ठूलो भागेदारी रहेको छ । तथा त्यसैगरी तिनीहरू ती व्यक्तिहरूमा नेताहरूस्वरूप खडा हुन्छन् । अथवा त्यसको अर्थ पापी समाजका ठूलाबडा र प्रभावशाली सदस्यहरू पनि हुन सक्छ ।

لَهُمْ دَارُ السَّلٰمِ عِنْدَ رَبِّهِمْ وَهُوَ وَلِيُّهُمْ بِمَا كَانُوْا يَعْمَلُوْنَ ﴿١٢٨﴾

१२८. तिनीहरूका निम्ति तिनका प्रतिपालककहाँ शान्तिको वासस्थान रहेको छ, तथा तिनीहरू जे गर्ने गर्थे त्यसका कारण उनी तिनीहरूका मित्र रहेका छन् ।

وَيَوْمَ يَحْشُرُهُمْ جَمِيْعًا ۚ يٰمَعْشَرَ الْجِنِّ قَدِ اسْتَكْثَرْتُمْ مِّنَ الْاِنْسِ ۚ وَقَالَ اَوْلِيٰٓؤُهُمْ مِّنَ الْاِنْسِ رَبَّنَا اسْتَمْتَعَ بَعْضُنَا بِبَعْضٍ وَّبَلَغْنَآ اَجَلَنَا الَّذِيْٓ اَجَّلْتَ لَنَا ۚ قَالَ النَّارُ مَثْوٰىكُمْ خٰلِدِيْنَ فِيْهَآ اِلَّا مَا شَآءَ اللّٰهُ ۚ اِنَّ رَبَّكَ حَكِيْمٌ عَلِيْمٌ ﴿١٢٩﴾

१२९. तथा त्यसदिन जब उनले तिनीहरू सबैलाई एकत्रित गर्नेछन्, (उनले भन्नेछन्), "हे जिन्नहरूका जमात हो ! तिमीहरूले मानिसहरूमध्ये धेरैजसोलाई (आफ्ना अधीनस्थ) बनाएका थियौ ।" तथा मानिसहरूमध्ये तिनीहरूका मित्र बनेका व्यक्तिहरूले भन्नेछन्, "हे हाम्रा प्रतिपालक ! हामीले एकअर्काबाट लाभ उठाएका थियौं, परन्तु (अब) हामी हाम्रो त्यस म्यादमा पुगेका छौं, जुन म्याद तिमीले हाम्रा निम्ति निर्धारण गरेका थियौ ।" उनले भन्नेछन्, "अग्नि नै तिमीहरूको ठेगाना रहेको छ जसमा तिमीहरू बसोबास गर्नेछौं," सिवाय त्यो जो अल्लाहको इच्छा हुन्छ । निश्चय नै, तिम्रा प्रतिपालक तत्त्वज्ञ, सर्वज्ञ छन् ।

وَكَذٰلِكَ نُوَلِّيْ بَعْضَ الظّٰلِمِيْنَ بَعْضًا بِمَا كَانُوْا يَكْسِبُوْنَ ﴿١٣٠﴾

१३०. तथा यसै प्रकार हामी केही अन्यायकारीहरूलाई अन्य अन्यायकारीहरू-सँग तिनीहरूका कमाईका आधारमा मिलाइदिन्छौं ।

يٰمَعْشَرَ الْجِنِّ وَالْاِنْسِ اَلَمْ يَاْتِكُمْ رُسُلٌ مِّنْكُمْ يَقُصُّوْنَ عَلَيْكُمْ اٰيٰتِيْ وَيُنْذِرُوْنَكُمْ لِقَآءَ يَوْمِكُمْ هٰذَا ۚ قَالُوْا شَهِدْنَا عَلٰٓى اَنْفُسِنَا وَغَرَّتْهُمُ الْحَيٰوةُ الدُّنْيَا وَشَهِدُوْا عَلٰٓى اَنْفُسِهِمْ اَنَّهُمْ كَانُوْا كٰفِرِيْنَ ﴿١٣١﴾

१३१. "हे जिन्न र मानिसहरूका जमात हो ! के तिमीहरूसमक्ष तिमीहरूमध्येबाटै यस्ता सन्देशवाहकहरू आएका थिएनन् जसले मेरा चिह्नहरू बयान गरेर सुनाउँथे तथा तिमीहरूलाई यस दिनको तिमीहरुको साक्षात्कारप्रति सतर्क गर्थे ?" तिनीहरूले भन्नेछन् "हामी आफ्नैविरुद्ध साक्षी दिन्छौं ।" तथा सांसारिक जीवनले तिनीहरूलाई धोका दियो । अनि तिनीहरू अविश्वासी रहेका थिए भनी तिनीहरूले आफ्नैविरुद्ध साक्षी दिनेछन् ।

ذٰلِكَ اَنْ لَّمْ يَكُنْ رَّبُّكَ مُهْلِكَ الْقُرٰى بِظُلْمٍ وَّاَهْلُهَا غٰفِلُوْنَ ﴿١٣٢﴾

१३२. यसको के कारण थियो भने तिम्रा प्रतिपालकले नगरहरूलाई त्यहाँका वासिन्दाहरूलाई सावधान नगरी

अनयायपूर्वक ध्वंस गर्न सक्दैनथे ।

१३३. तथा सबैका निम्ति तिनका कार्यअनुसारका दर्जाहरू निर्धारित छन्, तथा तिनीहरूका कार्यहरूबाट तिम्रा प्रतिपालक बेखबर छैनन् ।

وَلِكُلٍّ دَرَجٰتٌ مِّمَّا عَمِلُوْا ۖ وَمَا رَبُّكَ بِغَافِلٍ عَمَّا يَعْمَلُوْنَ ﴿١٣٢﴾

१३४. तथा तिम्रा प्रतिपालक अभावहीन, करुणाशील छन् । यदि उनले चाहेमा तिमीहरूलाई लगेर उनले जसलाई चाहन्छन् त्यसरी नै तिमीहरूका उत्तराधिकारी बनाउन सक्छन् । जसरी उनले तिमीहरूलाई अन्य जातिका सन्ततिबाट खडा गरेका छन् ।

وَرَبُّكَ الْغَنِيُّ ذُو الرَّحْمَةِ ۖ اِنْ يَّشَاْ يُذْهِبْكُمْ وَيَسْتَخْلِفْ مِنْۢ بَعْدِكُمْ مَّا يَشَآءُ كَمَآ اَنْشَاَكُمْ مِّنْ ذُرِّيَّةِ قَوْمٍ اٰخَرِيْنَ ﴿١٣٣﴾

१३५. निश्चय नै जुन कुराको तिमीहरूलाई वचन दिइएको छ तयो कुरा पूरा भएरै रहनेछ तथा (त्यसलाई) तिमीहरूले अवरोध गर्न सक्दैनौ ।

اِنَّ مَا تُوْعَدُوْنَ لَاٰتٍ ۙ وَّمَآ اَنْتُمْ بِمُعْجِزِيْنَ ﴿١٣٤﴾

१३६. तिमी भन, "हे मेरा मानिसहरू हो ? तिमीहरू यथासम्भव कार्य गर म पनि कार्यरत रहनेछु । अत: शीघ्र नै तिमीहरूले त्यस घरको प्रतिफलको हकदार को हुनेछ भन्ने कुरा थाहा पाउनेछौ ।" निश्चय नै, अत्याचार गर्नेहरू कृतकार्य हुनेछैनन् ।

قُلْ يٰقَوْمِ اعْمَلُوْا عَلٰى مَكَانَتِكُمْ اِنِّيْ عَامِلٌ ۚ فَسَوْفَ تَعْلَمُوْنَ ۙ مَنْ تَكُوْنُ لَهٗ عَاقِبَةُ الدَّارِ ۗ اِنَّهٗ لَا يُفْلِحُ الظّٰلِمُوْنَ ﴿١٣٥﴾

१३७. तथा तिनीहरूले अल्लाहका निम्ति उनले सृष्टि गरेका अन्नबाली र जनावरहरूबाट एउटा भाग निर्धारण गरेका छन्, तथा तिनीहरू आफ्नै धारणानुसार भन्छन्, "यो अल्लाहका निम्ति हो तथा यो हाम्रा भागीदारहरूका निम्ति हो ।" परन्तु जुन कुरा तिनीहरूका भागीदारहरूका निम्ति रहेको छ त्यो कुरा अल्लाहसमक्ष पुग्न सक्दैन, तर जुन कुरा अल्लाहका निम्ति रहेको छ त्यो कुरा भने तिनीहरूका भागीदारहरूलाई प्राप्त हुन सक्छ । तिनीहरूको अनुमान अति नै निकृष्ट रहेको छ ।

وَجَعَلُوْا لِلّٰهِ مِمَّا ذَرَاَ مِنَ الْحَرْثِ وَالْاَنْعَامِ نَصِيْبًا فَقَالُوْا هٰذَا لِلّٰهِ بِزَعْمِهِمْ وَهٰذَا لِشُرَكَآئِنَا ۚ فَمَا كَانَ لِشُرَكَآئِهِمْ فَلَا يَصِلُ اِلَى اللّٰهِ ۚ وَمَا كَانَ لِلّٰهِ فَهُوَ يَصِلُ اِلٰى شُرَكَآئِهِمْ ۗ سَآءَ مَا يَحْكُمُوْنَ ﴿١٣٦﴾

وَكَذَٰلِكَ زَيَّنَ لِكَثِيرٍ مِّنَ الْمُشْرِكِينَ قَتْلَ أَوْلَادِهِمْ شُرَكَاؤُهُمْ لِيُرْدُوهُمْ وَلِيَلْبِسُوا عَلَيْهِمْ دِينَهُمْ ۖ وَلَوْ شَاءَ اللَّهُ مَا فَعَلُوهُ ۖ فَذَرْهُمْ وَمَا يَفْتَرُونَ ﴿١٣٨﴾

१३८. तथा यसै प्रकार मूर्तिपूजकहरूमध्ये धेरैजसोलाई तिनीहरू (ले तुल्याए) का भागीदारहरूले तिनीहरूलाई विनाश गर्न र आफ्नो धर्मप्रति तिनीहरूमा भ्रम उत्पन्न गर्न (का निम्ति) आफ्ना सन्तान बध गर्ने कार्यलाई राम्रो (देखिने) पारेका थिए । तथा यदि अल्लाहले आफ्नो इच्छा (लादेका) भए तिनीहरूले त्यसो गर्ने थिएनन्; अत: तिनीहरूलाई तिनका मिथ्या कल्पनाका साथ एक्लै छाडिदेऊ ।

وَقَالُوا هَٰذِهِ أَنْعَامٌ وَحَرْثٌ حِجْرٌ لَّا يَطْعَمُهَا إِلَّا مَن نَّشَاءُ بِزَعْمِهِمْ وَأَنْعَامٌ حُرِّمَتْ ظُهُورُهَا وَأَنْعَامٌ لَّا يَذْكُرُونَ اسْمَ اللَّهِ عَلَيْهَا افْتِرَاءً عَلَيْهِ ۚ سَيَجْزِيهِم بِمَا كَانُوا يَفْتَرُونَ ﴿١٣٩﴾

१३९. तथा तिनीहरू भन्छन् "फलानो फलानो जनावर र अन्नबाली अवैध (अखाद्य) रहेका छन् जसलाई हामी अनुमति दिन्छौं उबाहेक कसैले त्यसबाट खान सक्दैन"– भन्ने कुरा उनीहरू गर्छन्– तथा केही जनावर यस्ता छन् जसका पिठ्यूँहरु निषेधित गरिएका छन् तथा केही ती जनावर (पनि) जसप्रति तिनीहरू अल्लाहको नाम उच्चारण गर्दैनन्, उनीविरुद्ध मिथ्या गढ्दै । उनले शीघ्र नै तिनीहरूलाई तिनले गढेको मिथ्याको बदला दिनेछन् ।

وَقَالُوا مَا فِي بُطُونِ هَٰذِهِ الْأَنْعَامِ خَالِصَةٌ لِّذُكُورِنَا وَمُحَرَّمٌ عَلَىٰ أَزْوَاجِنَا ۖ وَإِن يَكُن مَّيْتَةً فَهُمْ فِيهِ شُرَكَاءُ ۚ سَيَجْزِيهِمْ وَصْفَهُمْ ۚ إِنَّهُ حَكِيمٌ عَلِيمٌ ﴿١٤٠﴾

१४०. तथा तिनीहरू भन्छन्, "फलानो-फलानो जनावरको गर्भमा रहेको (कुरो) पूर्णरूपले हाम्रा पुरुषहरूका निम्ति रहेको छ भने हाम्रा पत्नीहरूका निम्ति अवैध गरिएको छ; परन्तु यदि त्यो मृत (पैदा) भएमा चाहिँ तिनीहरू (सबै) त्यसका भागीदार हुनेछन् । उनले तिनीहरूलाई तिनको भनाइको प्रतिफल दिनेछन् । निश्चय नै, उनी तत्त्वज्ञ, सर्वज्ञ छन् ।

قَدْ خَسِرَ الَّذِينَ قَتَلُوا أَوْلَادَهُمْ سَفَهًا بِغَيْرِ عِلْمٍ وَحَرَّمُوا مَا رَزَقَهُمُ اللَّهُ افْتِرَاءً عَلَى اللَّهِ ۚ قَدْ ضَلُّوا وَمَا كَانُوا مُهْتَدِينَ ﴿١٤١﴾

१४१. ती व्यक्तिहरू जसले आफ्ना सन्तानलाई मुर्खतापूर्वक अज्ञानताका कारण वध गर्छन् तथा अल्लाहप्रति मिथ्या गढ्दै उनले तिनीहरूलाई प्रदान गरेका वस्तुहरूलाई अवैध ठहऱ्याउँछन् निश्चय नै तिनीहरू घाटाग्रस्त रहेका छन् । तिनीहरू नि:सन्देह पथभ्रष्ट भएका छन् तथा

तिनीहरूलाई सन्मार्ग देखाइएको छैन ।

१४२. ती उनी नै हुन् जसले टेवासहित वा टेवाबिना नै खडा हुने बगैंचाहरू पैदा गरेका छन् तथा भिन्न भिन्न (स्वादका) फलयुक्त खजुर र अन्नबालीहरू तथा जैतुन र अनारहरू एकै प्रकारका र भिन्न भिन्न प्रकारका रहेका छन् । जब तिनीहरूमा फल लाग्छ तब तिमीहरू ती प्रत्येकबाट खाऊ । अतः त्यसको कटाइका दिन उनको अधिकार प्रदान गर तथा अपव्यय नगर । निश्चय नै, अल्लाहले अपव्यय गर्ने व्यक्तिहरूलाई मन पराउँदैनन् ।

وَهُوَ الَّذِيْٓ اَنْشَاَ جَنّٰتٍ مَّعْرُوْشٰتٍ
وَّغَيْرَ مَعْرُوْشٰتٍ وَّالنَّخْلَ وَالزَّرْعَ
مُخْتَلِفًا اُكُلُهٗ وَالزَّيْتُوْنَ وَالرُّمَّانَ
مُتَشَابِهًا وَّغَيْرَ مُتَشَابِهٍ ۭ كُلُوْا مِنْ
ثَمَرِهٖٓ اِذَآ اَثْمَرَ وَاٰتُوْا حَقَّهٗ يَوْمَ
حَصَادِهٖ ڮ وَلَا تُسْرِفُوْا ۭ اِنَّهٗ لَا يُحِبُّ
الْمُسْرِفِيْنَ ﴿١٤١﴾

१४३. अनि (उनले) जनावरहरूमध्ये केही भारी बोक्ने तथा (अन्य केही) बध गर्न(का निम्ति सृष्टि गरेका छन्) । अल्लाहले तिमीहरूलाई प्रदान गरेका वस्तुहरूबाट खाऊ तथा सैतानको पदअनुसरण नगर । त्यो निश्चय नै तिमीहरूको खुल्लमखुल्ला शत्रु हो ।

وَمِنَ الْاَنْعَامِ حَمُوْلَةً وَّفَرْشًا ۭ كُلُوْا
مِمَّا رَزَقَكُمُ اللّٰهُ وَلَا تَتَّبِعُوْا خُطُوٰتِ
الشَّيْطٰنِ ۭ اِنَّهٗ لَكُمْ عَدُوٌّ مُّبِيْنٌ ﴿١٤٢﴾

१४४. (उनले) पूर्णतया आठ जोडा (सृष्टि गरेका छन्) : भेडाहरूमध्ये दुई र बाखाहरूमध्ये दुई (मा आधारित)– तिमी भन, "के उनले दुईवटा भाले (पशु) अवैध ठहऱ्याएका छन् अथवा दुईवटा पोथी वा त्यो जो दुईवटा स्त्री (पशु)का गर्भमा रहेको छ? यदि तिमीहरू सच्चा हौ भने ज्ञानको आधारमा मलाई अवगत गराऊ ।"

ثَمٰنِيَةَ اَزْوَاجٍ ۚ مِنَ الضَّاْنِ اثْنَيْنِ
وَمِنَ الْمَعْزِ اثْنَيْنِ ۭ قُلْ ءٰۗالذَّكَرَيْنِ
حَرَّمَ اَمِ الْاُنْثَيَيْنِ اَمَّا اشْتَمَلَتْ
عَلَيْهِ اَرْحَامُ الْاُنْثَيَيْنِ ۭ نَبِّـُٔـوْنِيْ
بِعِلْمٍ اِنْ كُنْتُمْ صٰدِقِيْنَ ﴿١٤٣﴾

१४५. तथा उँटहरूमध्ये दुई र गोरुहरूमध्ये दुई । तिमी भन, "के उनले दुईवटा भाले (पशु) अवैध ठहऱ्याएका छन् अथवा दुईवटा पोथी (पशु) वा त्यो जो दुईवटा स्त्री (पशु) का गर्भमा रहेको छ? जब अल्लाहले तिमीहरूलाई यसको आदेश दिएका थिए के तिमीहरू त्यस समय उपस्थित थियौ ? त्यसो भए त्यो व्यक्तिभन्दा ठूलो अन्यायकारी को हुनसक्छ जसले विना ज्ञान मानिसहरूलाई पथभ्रष्ट गर्नका निम्ति अल्लाहप्रति मिथ्या

وَمِنَ الْاِبِلِ اثْنَيْنِ وَمِنَ الْبَقَرِ
اثْنَيْنِ ۭ قُلْ ءٰۗالذَّكَرَيْنِ حَرَّمَ اَمِ
الْاُنْثَيَيْنِ اَمَّا اشْتَمَلَتْ عَلَيْهِ اَرْحَامُ
الْاُنْثَيَيْنِ ۭ اَمْ كُنْتُمْ شُهَدَاۗءَ اِذْ وَصّٰىكُمُ
اللّٰهُ بِهٰذَا ۚ فَمَنْ اَظْلَمُ مِمَّنِ افْتَرٰى
عَلَى اللّٰهِ كَذِبًا لِّيُضِلَّ النَّاسَ بِغَيْرِ عِلْمٍ ۭ
اِنَّ اللّٰهَ لَا يَهْدِي الْقَوْمَ الظّٰلِمِيْنَ ﴿١٤٤﴾

आरोपित गर्छ? निश्चय नै, अल्लाहले अन्यायी व्यक्तिहरूलाई मार्ग प्रदर्शन गर्दैनन् ।

قُلْ لَّآ اَجِدُ فِيْ مَآ اُوْحِيَ اِلَيَّ مُحَرَّمًا عَلٰى
طَاعِمٍ يَّطْعَمُهٗٓ اِلَّآ اَنْ يَّكُوْنَ مَيْتَةً
اَوْ دَمًا مَّسْفُوْحًا اَوْ لَحْمَ خِنْزِيْرٍ فَاِنَّهٗ
رِجْسٌ اَوْ فِسْقًا اُهِلَّ لِغَيْرِ اللّٰهِ بِهٖ ۚ
فَمَنِ اضْطُرَّ غَيْرَ بَاغٍ وَّلَا عَادٍ فَاِنَّ
رَبَّكَ غَفُوْرٌ رَّحِيْمٌ ﴿١٤٦﴾

१४६. तिमी भन, "जुन कुरा मप्रति अवतीर्ण गरिएको छ त्यसमा कुनै वस्तु खान (इच्छा रहेको) व्यक्तिका निम्ति आफैं मरेको प्राणी वा बग्दो खुन अथवा सुँगुरको मासु– (कारण यी (सबैकुरा) अपवित्र रहेका हुनाले)– अथवा यस्तो फोहोर वस्तु जसमाथि अल्लाहलाई छाडी अन्य कसैको नाम उच्चारण गरिन्छ, यीबाहेक अन्य कुनै वस्तु म भोजनार्थ अवैध पाउँदिन । परन्तु जुन व्यक्ति अवज्ञाकारी अथवा (सीमोल्लङ्घनकारी नभई केवल (भोकले) विवश* भएमा तिम्रा प्रतिपालक निश्चय नै परम क्षमाशील, परम दानशील छन् ।

وَعَلَى الَّذِيْنَ هَادُوْا حَرَّمْنَا كُلَّ ذِيْ
ظُفُرٍ ۚ وَمِنَ الْبَقَرِ وَالْغَنَمِ حَرَّمْنَا عَلَيْهِمْ
شُحُوْمَهُمَآ اِلَّا مَا حَمَلَتْ ظُهُوْرُهُمَآ
اَوِ الْحَوَايَآ اَوْ مَا اخْتَلَطَ بِعَظْمٍ ۚ ذٰلِكَ
جَزَيْنٰهُمْ بِبَغْيِهِمْ ۖ وَاِنَّا لَصٰدِقُوْنَ ﴿١٤٧﴾

१४७. तथा यहुदीहरूका लागि हामीले ती सबै पशुहरू अवैध ठहऱ्याएका थियौं जसका नङ्ग्रा हुन्छन्; तथा गोरु, तथा भेंडा र बाखाहरूको पिठ्यूँ अथवा आन्द्रा वा हड्डीहरूमा मिसिएकोबाहेक तिनको बोसो तिनीहरूका निम्ति अवैध ठहऱ्याएका थियौं । तिनीहरूको विद्रोहका कारण हामीले तिनीहरूलाई यो प्रतिदान दिएका थियौं । तथा हामी निःसन्देह सत्यवादी रहेका छौं ।

فَاِنْ كَذَّبُوْكَ فَقُلْ رَّبُّكُمْ ذُوْ رَحْمَةٍ
وَّاسِعَةٍ ۚ وَلَا يُرَدُّ بَاْسُهٗ عَنِ الْقَوْمِ
الْمُجْرِمِيْنَ ﴿١٤٨﴾

१४८. परन्तु यदि तिनीहरूले तिमीलाई मिथ्यावादिताको आरोप लगाएमा तिमी भन, "तिमीहरूका प्रतिपालक अपार करुणाका आधार छन् तथा अपराधी व्यक्तिहरूबाट उनको कोप पन्साउन सकिंदैन ।

سَيَقُوْلُ الَّذِيْنَ اَشْرَكُوْا لَوْ شَآءَ اللّٰهُ
مَآ اَشْرَكْنَا وَلَآ اٰبَآؤُنَا وَلَا حَرَّمْنَا
مِنْ شَيْءٍ ۚ كَذٰلِكَ كَذَّبَ الَّذِيْنَ مِنْ

१४९. ती व्यक्तिहरू जसले (अल्लाहका) भागीदार बनाउँछन्, अवश्य के भन्नेछन् भने, "यदि अल्लाहले चाहेका भए न हामीले उनका भागीदार बनाउन सक्ने थियौं न हाम्रा पुर्खाले; न त हामीले कुनै वस्तुलाई अवैध

* यहाँ इज्तारा ( اِضْطُرَّ ) शब्दको अर्थ भोकमरीद्वारा विवश हुनु हो तथा यस्तो भोक हो जसको दबाउ एउटा व्यक्तिले सहन गर्न सक्दैन ।

قَبۡلِهِمۡ حَتّٰى ذَاقُوۡا بَاۡسَنَا ؕ قُلۡ هَلۡ عِنۡدَكُمۡ مِّنۡ عِلۡمٍ فَتُخۡرِجُوۡهُ لَنَا ؕ اِنۡ تَتَّبِعُوۡنَ اِلَّا الظَّنَّ وَاِنۡ اَنۡتُمۡ اِلَّا تَخۡرُصُوۡنَ ﴿۱۴۸﴾

ठहऱ्याउन सक्ने थियौं ।" यसै प्रकार यिनीहरू भन्दा पहिला रहेका ती व्यक्तिहरूले जबसम्म हाम्रो दण्ड चाखेनन् तबसम्म अल्लाहका सन्देशवाहकहरूप्रति) मिथ्या-वादिताको आरोप लगाइ नै रहे । तिमी भन, "के तिमीहरूमा कुनै ज्ञान छ? यदि छ भने त्यो हाम्रासमक्ष प्रस्तुत गर । तिमीहरू केवल मिथ्या अड्कलवाजीवाहेक केहीको अनुसरण गर्दैनौ । तथा तिमीहरू केवल मिथ्या कुराहरूबाहेक अरू केही गर्दैनौ ।"

قُلۡ فَلِلّٰهِ الۡحُجَّةُ الۡبَالِغَةُ ۚ فَلَوۡ شَآءَ لَهَدٰٮكُمۡ اَجۡمَعِيۡنَ ﴿۱۴۹﴾

१५०. तिमी भन, "निर्णायक तर्क ता केवल अल्लाहकै रहेको छ । यदि उनले आफ्नो इच्छा (लाद्न) चाहेका भए, निश्चय नै तिमीहरू सबैलाई उनले सन्मार्ग प्रदर्शन गर्नसक्ने थिए ।"

قُلۡ هَلُمَّ شُهَدَآءَكُمُ الَّذِيۡنَ يَشۡهَدُوۡنَ اَنَّ اللّٰهَ حَرَّمَ هٰذَا ۚ فَاِنۡ شَهِدُوۡا فَلَا تَشۡهَدۡ مَعَهُمۡ ۚ وَلَا تَتَّبِعۡ اَهۡوَآءَ الَّذِيۡنَ كَذَّبُوۡا بِاٰيٰتِنَا وَالَّذِيۡنَ لَا يُؤۡمِنُوۡنَ بِالۡاٰخِرَةِ وَهُمۡ بِرَبِّهِمۡ يَعۡدِلُوۡنَ ﴿۱۵۰﴾

१५१. तिमी भन, "आफ्ना ती साक्षीहरूलाई सामुन्ने ल्याऊ जसले अल्लाहले त्यस (वस्तु) लाई अवैध ठहऱ्याएका छन् भनी साक्षी दिऊन् । यदि तिनीहरूले साक्षी दिए भने तिमी तिनीहरूसँग साक्षी नदेउ, न त तिमी ती व्यक्तिहरूको कुइच्छाको अनुसरण गर जसले हाम्रा चिह्नहरूप्रति मिथ्यास्वरूप व्यवहार गरेका छन् तथा जसले परलोकप्रति विश्वास गर्दैनन् तथा तिनीहरू आफ्ना प्रतिपालकका भागीदारहरूको स्थापना गर्छन्

قُلۡ تَعَالَوۡا اَتۡلُ مَا حَرَّمَ رَبُّكُمۡ عَلَيۡكُمۡ اَلَّا تُشۡرِكُوۡا بِهٖ شَيۡــًٔـا وَّبِالۡوَالِدَيۡنِ اِحۡسَانًا ۚ وَلَا تَقۡتُلُوۡۤا اَوۡلَادَكُمۡ مِّنۡ اِمۡلَاقٍ ؕ نَحۡنُ نَرۡزُقُكُمۡ وَاِيَّاهُمۡ ۚ وَلَا تَقۡرَبُوا الۡفَوَاحِشَ مَا ظَهَرَ مِنۡهَا وَمَا بَطَنَ ۚ وَلَا تَقۡتُلُوا النَّفۡسَ الَّتِىۡ حَرَّمَ اللّٰهُ اِلَّا بِالۡحَقِّ ؕ ذٰلِكُمۡ وَصّٰٮكُمۡ بِهٖ لَعَلَّكُمۡ تَعۡقِلُوۡنَ ﴿۱۵۱﴾

१५२. तिमी भन, "आऊ, जुन कुरा तिमीहरूका प्रतिपालकले तिमीहरूका निम्ति पवित्र ठहऱ्याएका छन् त्यो कुरा म तिमीहरूलाई पढेर सुनाउनेछु: ताकि तिमीहरू कसैलाई उनका भागीदार नबनाऊ तथा माता-पितासित अत्यन्त उदारतापूर्ण व्यवहार गर, तथा दरिद्र हुने (आशङ्काले) आफ्ना सन्तानको हत्या नगर– हामी नै हौं जसले तिमीहरूलाई र तिनीहरूलाई प्रदान गर्छौं– तथा कुकर्मका निकट नजाऊ चाहे (त्यो) प्रकाश्य होस् अथवा गुप्त तथा जुन प्राणीलाई अल्लाहले

पवित्र ठहऱ्याएका छन्, त्यसलाई अधिकारबिना हत्या नगर । यही नै उनले तिमीहरूलाई आदेश दिएका छन् ताकि तिमीहरू बुझ्न सक ।

१५३. "तथा टुहुराको सम्पत्तिका निकट मङ्गल साधनको (मार्ग)बाहेक तिमीहरू तबसम्म नजाऊ जबसम्म उ परिपक्व अवस्थामा पुग्दैन । तथा न्यायसँगत ढंगले पूरा माप दिने गर र तौलने गर । कुनै व्यक्तिमाथि त्यसको क्षमताभन्दा अधिक जिम्मेवारी हामी थोपर्दैनौ । तथा जब तिमीहरू बोल्छौ, न्यायसङ्गत बोल्ने गर, चाहे त्यो -व्यक्ति जसका बारेमा बोलिन्छ) निकट सम्बन्धी नै किन नहोस्, तथा अल्लाहको अङ्गीकारलाई पूर्ण गर । तिमीहरू स्मरण गरिराख भनी उनले तिमीहरूलाई यो आदेश दिएका हुन् ।"

وَلَا تَقْرَبُوا مَالَ الْيَتِيمِ إِلَّا بِالَّتِي هِيَ أَحْسَنُ حَتَّىٰ يَبْلُغَ أَشُدَّهُ ۖ وَأَوْفُوا الْكَيْلَ وَالْمِيزَانَ بِالْقِسْطِ ۖ لَا نُكَلِّفُ نَفْسًا إِلَّا وُسْعَهَا ۖ وَإِذَا قُلْتُمْ فَاعْدِلُوا وَلَوْ كَانَ ذَا قُرْبَىٰ ۖ وَبِعَهْدِ اللَّهِ أَوْفُوا ۚ ذَٰلِكُمْ وَصَّاكُم بِهِ لَعَلَّكُمْ تَذَكَّرُونَ ﴿١٥٣﴾

१५४. तथा (भन), "सीधा (डोऱ्याउने) यही नै मेरो मार्ग हो । त्यसकारण यसको अनुसरण गर; तथा (अन्यान्य) मार्गहरूको अनुसरण नगर, अन्यथा तिनीहरूले तिमीहरूलाई उनका मार्गबाट विचलित गर्नेछन् । तिमीहरू (कुकर्महरु विरुद्ध) प्रतिरक्षा गर्न (सक भनी) उनले तिमीहरूलाई यो आदेश दिएका हुन् ।"

وَأَنَّ هَٰذَا صِرَاطِي مُسْتَقِيمًا فَاتَّبِعُوهُ ۖ وَلَا تَتَّبِعُوا السُّبُلَ فَتَفَرَّقَ بِكُمْ عَن سَبِيلِهِ ۚ ذَٰلِكُمْ وَصَّاكُم بِهِ لَعَلَّكُمْ تَتَّقُونَ ﴿١٥٤﴾

१५५. पुनः, हामीले मूसालाई यस्तो पुस्तक प्रदान गरेका थियौं जसले उत्तम कर्म गर्ने व्यक्तिका आवश्यकताहरू पूर्ण गर्छ तथा सम्पूर्ण वस्तुहरूबारे विस्तारपूर्वक व्याख्या गर्छ तथा त्यो मार्गदर्शन र करुणस्वरूप रहेको छ ताकि तिनीहरूमा आफ्ना प्रतिपालकसित हुने साक्षात्कारप्रति विश्वास उत्पन्न होस् ।

ثُمَّ آتَيْنَا مُوسَى الْكِتَابَ تَمَامًا عَلَى الَّذِي أَحْسَنَ وَتَفْصِيلًا لِّكُلِّ شَيْءٍ وَهُدًى وَرَحْمَةً لَّعَلَّهُم بِلِقَاءِ رَبِّهِمْ يُؤْمِنُونَ ﴿١٥٥﴾

१५६. तथा यो पुस्तक जुन हामीले अवतीर्ण गरेका छौं; (यो) अनुग्रहपूर्ण रहेको छ । अतः यसको अनुसरण गर, तथा -पापका विरुद्ध) सतर्क रहने गर ताकि तिमीहरूप्रति करुणा

وَهَٰذَا كِتَابٌ أَنزَلْنَاهُ مُبَارَكٌ فَاتَّبِعُوهُ وَاتَّقُوا لَعَلَّكُمْ تُرْحَمُونَ ﴿١٥٦﴾

प्रदर्शन गरियोस्;

१५७. अन्यथा तिमीहरूले भन्नेछौ, "हामीभन्दा अघि केवल दुई जातिहरूप्रति पुस्तक अवतीर्ण गरिएको थियो, तथा हामीहरू निश्चय नै तिनीहरूको अध्ययनप्रति बेपर्वाह रहेका थियौं;"

أَنْ تَقُوْلُوْٓا إِنَّمَآ أُنْزِلَ الْكِتٰبُ عَلٰى طَآئِفَتَيْنِ مِنْ قَبْلِنَا ۖ وَإِنْ كُنَّا عَنْ دِرَاسَتِهِمْ لَغٰفِلِيْنَ ﴿١٥٦﴾

१५८. अथवा कहीं तिमीहरू के नभन भने, "यदि पुस्तक हामीप्रति अवतीर्ण गरिएको भए, हामी निश्चय नै तिनीहरूभन्दा अधिक सन्मार्गप्राप्त हुने थियौं ।" अत: (अब) तिमीहरूसमक्ष तिमीहरूका प्रतिपालकका तर्फबाट एउटा स्पष्ट प्रमाण, तथा एउटा मार्गदर्शन र एउटा अनुग्रहको आगमन भएको छ । अत: त्यो व्यक्तिभन्दा अधिक अत्याचारी को हुनसक्छ र जसले अल्लाहका चिह्नहरूलाई अस्वीकार गर्छ र तिनीहरूबाट विमुख हुन्छ? जुन व्यक्तिहरू हाम्रा चिह्नहरूबाट विमुख हुन्छन् तिनीहरूको विमुखताका कारण हामी तिनीहरूलाई एउटा पीडादायक दण्डद्वारा प्रतिफल दिनेछौं ।

أَوْ تَقُوْلُوْا لَوْ أَنَّآ أُنْزِلَ عَلَيْنَا الْكِتٰبُ لَكُنَّآ أَهْدٰى مِنْهُمْ ۚ فَقَدْ جَآءَكُمْ بَيِّنَةٌ مِّنْ رَّبِّكُمْ وَهُدًى وَّرَحْمَةٌ ۚ فَمَنْ أَظْلَمُ مِمَّنْ كَذَّبَ بِاٰيٰتِ اللّٰهِ وَصَدَفَ عَنْهَا ۗ سَنَجْزِى الَّذِيْنَ يَصْدِفُوْنَ عَنْ اٰيٰتِنَا سُوْٓءَ الْعَذَابِ بِمَا كَانُوْا يَصْدِفُوْنَ ﴿١٥٧﴾

१५९. के तिनीहरू केवल फरिस्ताहरू तिनीहरूसमक्ष आऊन् भन्ने अपेक्षा गर्छन् अथवा तिम्रा प्रतिपालकको आगमन होस् अथवा तिम्रा प्रतिपालकका केही चिह्नहरूको आगमन होस् भन्ने ? त्यसदिन जब तिम्रा प्रतिपालकका चिह्नहरूमध्ये केहीको आगमन हुनेछ; तब तिनीहरूप्रति विश्वास स्थापना गर्नाले त्यसअघि, विश्वास स्थापना नगरेको अथवा आफ्नो विश्वासद्वारा कुनै पुण्य आर्जन गरिनसकेको कुनै आत्मालाई केही लाभ प्राप्त हुनेछैन । तिमी भन, "तिमीहरू प्रतीक्षा गर, हामी (पनि) प्रतीक्षा गरिरहेछौं ।"

هَلْ يَنْظُرُوْنَ إِلَّآ أَنْ تَأْتِيَهُمُ الْمَلٰٓئِكَةُ أَوْ يَأْتِيَ رَبُّكَ أَوْ يَأْتِيَ بَعْضُ اٰيٰتِ رَبِّكَ ۗ يَوْمَ يَأْتِيْ بَعْضُ اٰيٰتِ رَبِّكَ لَا يَنْفَعُ نَفْسًا إِيْمَانُهَا لَمْ تَكُنْ اٰمَنَتْ مِنْ قَبْلُ أَوْ كَسَبَتْ فِيْٓ إِيْمَانِهَا خَيْرًا ۗ قُلِ انْتَظِرُوْٓا إِنَّا مُنْتَظِرُوْنَ ﴿١٥٨﴾

१६०. तथा ती व्यक्तिहरू जसले आफ्ना धर्मलाई विखण्डित तुल्याएका छन् तथा सम्प्रदायहरुमा (विभाजित) भएका छन् तिनीहरूसँग तिम्रो केही सरोकार छैन । निश्चय नै तिनीहरूको मामिला अल्लाहसमक्ष

إِنَّ الَّذِيْنَ فَرَّقُوْا دِيْنَهُمْ وَكَانُوْا شِيَعًا لَّسْتَ مِنْهُمْ فِيْ شَيْءٍ ۚ إِنَّمَآ أَمْرُهُمْ إِلَى اللّٰهِ ثُمَّ يُنَبِّئُهُمْ بِمَا

كَانُوْا يَفْعَلُوْنَ ﴿١٦٠﴾

आउनेछ, तब तिनीहरूले गर्ने गरेका कार्यहरूप्रति उनले नै तिनीहरूलाई अवगत गराउने छन् ।

مَنْ جَآءَ بِالْحَسَنَةِ فَلَهٗ عَشْرُ اَمْثَالِهَا ۚ وَمَنْ جَآءَ بِالسَّيِّئَةِ فَلَا يُجْزٰٓى اِلَّا مِثْلَهَا وَهُمْ لَا يُظْلَمُوْنَ ﴿١٦١﴾

१६१. जसले कुनै पुण्कार्य गर्छ त्यसलाई दसगुणा अधिक प्राप्त हुनेछ" परन्तु जसले कुनै दुष्कार्य गर्छ, त्यसलाई केवल त्यसै बराबर प्रतिफल मिल्नेछ; तथा तिनीहरूप्रति अन्याय गरिनेछैन ।

قُلْ اِنَّنِيْ هَدٰىنِيْ رَبِّيْٓ اِلٰى صِرَاطٍ مُّسْتَقِيْمٍ ۚ دِيْنًا قِيَمًا مِّلَّةَ اِبْرٰهِيْمَ حَنِيْفًا ۚ وَمَا كَانَ مِنَ الْمُشْرِكِيْنَ ﴿١٦٢﴾

१६२. तिमी भन, "मलाई त मेरा प्रतिपालकले सन्मार्गतर्फ डोऱ्याएका छन्– एउटा शुद्ध धर्मतर्फ, (अर्थात्) उनै इब्राहिमको धर्म जो सदा सन्मार्गतर्फ झुकिरहन्थे । तथा उनी अनेकाश्वरवादी- हरूमध्ये थिएनन् ।"

قُلْ اِنَّ صَلَاتِيْ وَنُسُكِيْ وَمَحْيَايَ وَمَمَاتِيْ لِلّٰهِ رَبِّ الْعٰلَمِيْنَ ﴿١٦٣﴾

१६३. तिमी भन, "मेरो उपासना र मेरो बलिदान तथा मेरो जीवन र मेरो मृत्यु (सबै नै) विश्वब्रह्माण्डका स्वामी अल्लाहका निम्ति रहेका छन् ।

لَا شَرِيْكَ لَهٗ ۚ وَبِذٰلِكَ اُمِرْتُ وَاَنَا اَوَّلُ الْمُسْلِمِيْنَ ﴿١٦٤﴾

१६४. "उनको कोही भागीदार छैन । तथा यही नै आदेश मलाई दिइएको छ, तथा आत्म- समर्पण गर्नेमध्ये म (नै) सर्वप्रथम रहेको छु।

قُلْ اَغَيْرَ اللّٰهِ اَبْغِيْ رَبًّا وَّهُوَ رَبُّ كُلِّ شَيْءٍ ۚ وَلَا تَكْسِبُ كُلُّ نَفْسٍ اِلَّا عَلَيْهَا ۚ وَلَا تَزِرُ وَازِرَةٌ وِّزْرَ اُخْرٰى ۚ ثُمَّ اِلٰى رَبِّكُمْ مَّرْجِعُكُمْ فَيُنَبِّئُكُمْ بِمَا كُنْتُمْ فِيْهِ تَخْتَلِفُوْنَ ﴿١٦٥﴾

१६५. तिमी भन, "जब अल्लाह नै सम्पूर्ण वस्तुहरूका स्वामी हुन् भने, के म उनलाई छाडी अन्य कुनै स्वामीको खोजी गरुँ त?" तथा कुनै व्यक्तिले केही कार्य (पाप) कमाउँदैन परन्तु त्यसको प्रतिभार त्यसै माथि पर्नेछ" न त कुनै बोझ उठाउनेले अन्य कसैको बोझ उठाउने छ । तब तिमीहरूका प्रतिपालकतर्फ नै तिमीहरूले फर्कनु पर्नेछ, तथा जुन कुरामा तिमीहरू आपसमा मतभेद

राख्ने गर्थ्यौ त्यसबारे उनले तिमीहरूलाई अवगत गराउने छन् ।

وَهُوَ الَّذِي جَعَلَكُمْ خَلَٰٓئِفَ الْأَرْضِ وَرَفَعَ بَعْضَكُمْ فَوْقَ بَعْضٍ دَرَجَٰتٍ لِّيَبْلُوَكُمْ فِي مَآ ءَاتَىٰكُمْ ۗ إِنَّ رَبَّكَ سَرِيعُ الْعِقَابِ وَإِنَّهُۥ لَغَفُورٌ رَّحِيمٌۢ ﴿١٦٥﴾

१६६. तथा उनी नै हुन् जसले तिमीहरूलाई पृथ्वीमा (अन्य व्यक्तिहरूका) उत्तराधिकारी तुल्याएका छन् तथा तिमीहरूमध्ये केहीलाई अन्य केहीभन्दा माथिको -दर्जा) प्रदान गरेका छन् ताकि उनले जुन कुरा तिमीहरूलाई प्रदान गरेका छन् त्यसद्वारा तिमीहरूलाई जाँच्न सकून् । निश्चय नै तिम्रा प्रतिपालक शीघ्र दण्ड दिने गर्छन्; तथा उनी निश्चय नै परम क्षमाशील, परम दयाशील छन् ।



## अल्-'आराफ
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम दयालु, परम कृपालु अल्लाहको नाममा ।

الٓمّٓصٓ ②

२. अलिफ, लाम, मिम साद* ।

كِتٰبٌ اُنْزِلَ اِلَيْكَ فَلَا يَكُنْ فِيْ صَدْرِكَ حَرَجٌ مِّنْهُ لِتُنْذِرَ بِهٖ وَذِكْرٰى لِلْمُؤْمِنِيْنَ ③

३. (यो) पुस्तक तिमीप्रति अवतीर्ण गरिएको छ– त्यसकारण यसबारे तिम्रो अन्तरमा कुनै प्रकारको सङ्कीर्णता उत्पन्न नहोस्– ताकि त्यसद्वारा तिमी सतर्क गर्न सक, तथा विश्वासीजनका निम्ति यो एउटा उपदेशस्वरूप (होस्) ।

اِتَّبِعُوْا مَآ اُنْزِلَ اِلَيْكُمْ مِّنْ رَّبِّكُمْ وَلَا تَتَّبِعُوْا مِنْ دُوْنِهٖٓ اَوْلِيَآءَ قَلِيْلًا مَّا تَذَكَّرُوْنَ ④

४. तिमीहरूका प्रतिपालकका तर्फबाट जुन कुरा तिमीहरूप्रति अवतीर्ण गरिएको छ त्यसको अनुसरण गर, तथा उनीबाहेक अन्य कुनै संरक्षकहरूका अनुगामी नबन । तिमीहरू कति थोरै स्मरण गर्ने गर्छौ ।

وَكَمْ مِّنْ قَرْيَةٍ اَهْلَكْنٰهَا فَجَآءَهَا بَاْسُنَا بَيَاتًا اَوْ هُمْ قَآئِلُوْنَ ⑤

५. हामीले कति नगरहरू ध्वंस गर्‍यौं । तथा तिनीहरूमाथि हाम्रो दण्ड रात्रि समयमा अथवा मध्यान्हमा तिनीहरूले विश्राम गरिरहेको समयमा आयो ।

فَمَا كَانَ دَعْوٰىهُمْ اِذْ جَآءَهُمْ بَاْسُنَآ اِلَّآ اَنْ قَالُوْٓا اِنَّا كُنَّا ظٰلِمِيْنَ ⑥

६. अत: जब हाम्रो दण्ड तिनीहरूमाथि बर्स्यो, तिनीहरूको पुकार यसबाहेक केही थिएन परन्तु तिनीहरूले भने: "हामी नि:सन्देह अत्याचारी थियौं !"

فَلَنَسْـَٔلَنَّ الَّذِيْنَ اُرْسِلَ اِلَيْهِمْ وَلَنَسْـَٔلَنَّ الْمُرْسَلِيْنَ ⑦

७. तथा तिनीहरूलाई हामी अवश्य सोध्ने छौं जसतर्फ सन्देशवाहकहरू पठाइएका थिए, तथा हामी अवश्य सन्देशवाहकहरूलाई

---

* म अल्लाह, सर्वज्ञ छु तथा म व्याख्या गर्छु ।

(पनि) सोध्नेछौं ।

فَلَنَقُصَّنَّ عَلَيْهِمْ بِعِلْمٍ وَّ مَا كُنَّا غَآئِبِيْنَ ﴿٧﴾

८. तब हामी अवश्य तिनीहरूसमक्ष ज्ञानका साथ (तिनका कार्यहरूको) वर्णन गर्नेछौं, किनभने हामी कदापि अनुपस्थित थिएनौं ।

وَ الْوَزْنُ يَوْمَئِذِ ِۨالْحَقُّ ۚ فَمَنْ ثَقُلَتْ مَوَازِيْنُهٗ فَاُولٰٓئِكَ هُمُ الْمُفْلِحُوْنَ ﴿٨﴾

९. तथा त्यसदिन तौल नितान्त सत्य हुने छ । तब जसको पल्ला गहकिलो हुन्छ, तिनीहरू नै कृतकार्य हुनेछन् ।

وَ مَنْ خَفَّتْ مَوَازِيْنُهٗ فَاُولٰٓئِكَ الَّذِيْنَ خَسِرُوْٓا اَنْفُسَهُمْ بِمَا كَانُوْا بِاٰيٰتِنَا يَظْلِمُوْنَ ﴿٩﴾

१०. तथा ती व्यक्तिहरू जसको पल्ला हलुका हुन्छ, तिनीहरू नै हुन् जसले हाम्रा चिह्नहरूप्रति अन्याय (पूर्ण व्यवहार) गरेका कारण आफ्नै आत्मालाई नष्ट तुल्याउनेछन्

وَلَقَدْ مَكَّنّٰكُمْ فِى الْاَرْضِ وَجَعَلْنَا لَكُمْ فِيْهَا مَعَايِشَ ۗ قَلِيْلًا مَّا تَشْكُرُوْنَ ﴿١٠﴾

११. तथा हामीले तिमीहरूलाई पृथ्वीमा सुदृढ तुल्याएका छौं तथा त्यहाँ तिमीहरूका निम्ति जीविकाका साधनहरू उपलब्ध गराएकाछौं । तिमीहरू कति कम कृतज्ञताज्ञापन गर्छौ !

وَلَقَدْ خَلَقْنٰكُمْ ثُمَّ صَوَّرْنٰكُمْ ثُمَّ قُلْنَا لِلْمَلٰٓئِكَةِ اسْجُدُوْا لِاٰدَمَ ۖ فَسَجَدُوْٓا اِلَّآ اِبْلِيْسَ ۗ لَمْ يَكُنْ مِّنَ السّٰجِدِيْنَ ﴿١١﴾

१२. तथा हामीले तिमीहरूलाई सृष्टि गरेका थियौं, त्यसपछि हामीले तिमीहरूलाई आकृति प्रदान गरेका थियौं; तत्पश्चात् हामीले फरिस्ताहरूलाई भनेका थियौं, "आदमका आज्ञाकारी बन;" तथा तिनीहरू (सबै) आज्ञाकारी बने । परन्तु इब्लिस (भने बनेन), त्यो आज्ञाकारीहरूमध्येको बनेन ।

قَالَ مَا مَنَعَكَ اَلَّا تَسْجُدَ اِذْ اَمَرْتُكَ ۗ قَالَ اَنَا خَيْرٌ مِّنْهُ ۚ خَلَقْتَنِىْ مِنْ نَّارٍ وَّ خَلَقْتَهٗ مِنْ طِيْنٍ ﴿١٢﴾

१३. (अल्लाहले) भने, "मैले आदेश दिएपछि कुन कुराले तिमीलाई आज्ञाकारी बन्नबाट रोक्यो?" उसले भन्यो, "उभन्दा म श्रेष्ठ रहेको छु । तिमीले मलाई अग्निबाट सिर्जना गरेका छौ भने उसलाई चाहिँ तिमीले गिलो माटोबाट सिर्जना गरेका छौ ।

قَالَ فَاهْبِطْ مِنْهَا فَمَا يَكُوْنُ لَكَ اَنْ

१४. (अल्लाहले) भने, "त्यसो भए यहाँबाट

تَتَكَبَّرَ فِيْهَا فَاخْرُجْ اِنَّكَ مِنَ الصّٰغِرِيْنَ ﴿١٣﴾

निस्केर गइहाल; यहाँ अहङ्कारी बन्नु तिम्रा निम्ति उचित हुनेछैन । तुरुन्त निस्केर गइहाल; तिमी निश्चय नै तिरस्कृत व्यक्तिहरूमध्येका रहेका छौ ।"

قَالَ اَنْظِرْنِيْٓ اِلٰى يَوْمِ يُبْعَثُوْنَ ﴿١٤﴾

१५. उसले भन्यो, "तिनीहरूलाई उत्थान गरिने दिनसम्मका निम्ति मलाई अवसर देऊ ।"

قَالَ اِنَّكَ مِنَ الْمُنْظَرِيْنَ ﴿١٥﴾

१६. (अल्लाहले) भने, "तिमी ती व्यक्तिहरूमध्येका हुनेछौ जसलाई अवसर दिइएको छ ।"

قَالَ فَبِمَآ اَغْوَيْتَنِيْ لَاَقْعُدَنَّ لَهُمْ صِرَاطَكَ الْمُسْتَقِيْمَ ﴿١٦﴾

१७. उसले भन्यो: "अब, जब तिमीले मलाई पथभ्रष्ट निर्णय गरिसक्यौ भने, म निश्चयपूर्वक तिनीहरूका निम्ति तिम्रो सन्मार्ग कुरेर बस्नेछु ।"

ثُمَّ لَاٰتِيَنَّهُمْ مِّنْۢ بَيْنِ اَيْدِيْهِمْ وَمِنْ خَلْفِهِمْ وَعَنْ اَيْمَانِهِمْ وَعَنْ شَمَآئِلِهِمْ ؕ وَلَا تَجِدُ اَكْثَرَهُمْ شٰكِرِيْنَ ﴿١٧﴾

१८. "त्यसपछि म निश्चय नै तिनीहरूसमक्ष तिनीहरूका अगाडिबाट र तिनीहरूका पछाडिबाट तथा तिनीहरूका दाहिनेतर्फबाट र तिनीहरूका बायाँतर्फबाट आउनेछु, तथा तिनीहरूमध्ये अधिकतरलाई तिमीले कृतज्ञ पाउनेछैनौ ।"

قَالَ اخْرُجْ مِنْهَا مَذْءُوْمًا مَّدْحُوْرًا ؕ لَمَنْ تَبِعَكَ مِنْهُمْ لَاَمْلَئَنَّ جَهَنَّمَ مِنْكُمْ اَجْمَعِيْنَ ﴿١٨﴾

१९. (अल्लाहले) भने: "यहाँबाट अपमानित र बहिष्कृतस्वरूप निस्केर जाऊ । तिनीहरूमध्ये जसले तिम्रो अनुसारण गर्नेछन्, म निश्चय नै तिमीहरू सबैद्वारा नर्कलाई भर्नेछु।"

وَيٰٓاٰدَمُ اسْكُنْ اَنْتَ وَزَوْجُكَ الْجَنَّةَ فَكُلَا مِنْ حَيْثُ شِئْتُمَا وَلَا تَقْرَبَا هٰذِهِ الشَّجَرَةَ فَتَكُوْنَا مِنَ الظّٰلِمِيْنَ ﴿١٩﴾

२०. "तथा हे आदम! तिमी र तिम्री पत्नी बगैंचामा बास गर तथा त्यहाँ जहाँ जहाँबाट तिमीहरू चाहन्छौ खाऊ, परन्तु त्यस वृक्षका निकट नजाऊ अन्यथा तिमीहरू अन्यायकारीहरूमध्येका हुनेछौ ।"

فَوَسْوَسَ لَهُمَا الشَّيْطٰنُ لِيُبْدِيَ لَهُمَا مَا

२१. परन्तु सैतानल तिनीहरू

وُۥرِيَ عَنْهُمَا مِن سَوْءَٰتِهِمَا وَقَالَ مَا نَهَىٰكُمَا رَبُّكُمَا عَنْ هَٰذِهِ ٱلشَّجَرَةِ إِلَّآ أَن تَكُونَا مَلَكَيْنِ أَوْ تَكُونَا مِنَ ٱلْخَٰلِدِينَ ﴿٢١﴾

प्रतितिनीहरूको त्यस दुर्बलतालाई प्रकट गर्नका निम्ति जुन तिनीहरूभित्र गुप्त रहेको थियो, तिनीहरूलाई कानेखुसी गरी (परामर्श दियो तथा भन्यो, "तिमीहरूका अल्लाहले केवल तिमीहरू फरिस्ता अथवा अमर (प्राणी) बन्नेछौं भनी तिमीहरूलाई त्यस वृक्षबाट रोकेका हुन् ।"

وَقَاسَمَهُمَآ إِنِّى لَكُمَا لَمِنَ ٱلنَّٰصِحِينَ ﴿٢٢﴾

२२. तथा उसले तिनीहरूसमक्ष (के भन्दै) शपथ खायो भने, "निश्चय नै, म तिमीहरूको निष्कपट परामर्शदाता हुँ ।"

فَدَلَّىٰهُمَا بِغُرُورٍ ۚ فَلَمَّا ذَاقَا ٱلشَّجَرَةَ بَدَتْ لَهُمَا سَوْءَٰتُهُمَا وَطَفِقَا يَخْصِفَانِ عَلَيْهِمَا مِن وَرَقِ ٱلْجَنَّةِ ۖ وَنَادَىٰهُمَا رَبُّهُمَآ أَلَمْ أَنْهَكُمَا عَن تِلْكُمَا ٱلشَّجَرَةِ وَأَقُل لَّكُمَآ إِنَّ ٱلشَّيْطَٰنَ لَكُمَا عَدُوٌّ مُّبِينٌ ﴿٢٣﴾

२३. अतः छल-कपटका उपायले उसले तिनीहरूलाई (आज्ञा उल्लङ्घनतर्फ) गर्न बाध्य गऱ्यो । तथा जब तिनीहरूले त्यस वृक्षबाट चाखे तब तिनीहरूको नग्नता तिनीहरूप्रति पूर्णतया प्रकट भयो तथा तिनीहरू दुबैले आफूमा बगैंचाका पत्ताहरू टाँस्न थाले । तथा तिनीहरूका अल्लाहले तिनीहरूलाई के भन्दै बोलाए भने, "के तिमीहरूलाई मैले त्यस वृक्षबाट रोकेको थिइँन तथा निश्चय नै सैतान तिमीहरूको एउटा खुल्लमखुल्ला शुत्र हो भनी तिमीहरूलाई भनेको थिइँन र?"

قَالَا رَبَّنَا ظَلَمْنَآ أَنفُسَنَا وَإِن لَّمْ تَغْفِرْ لَنَا وَتَرْحَمْنَا لَنَكُونَنَّ مِنَ ٱلْخَٰسِرِينَ ﴿٢٤﴾

२४. तिनीहरूले भने, "हे हाम्रा अल्लाह, हामीले स्वयम्माथि अन्याय गरेका छौं; तथा यदि तिमीले हामीलाई क्षमा प्रदान गरेनौ तथा हामीमाथि करुणा गरेनौ भने हामी निश्चय नै घाटा खाने व्यक्तिहरूमध्येका हुनेछौं ।

قَالَ ٱهْبِطُوا۟ بَعْضُكُمْ لِبَعْضٍ عَدُوٌّ ۖ وَلَكُمْ فِى ٱلْأَرْضِ مُسْتَقَرٌّ وَمَتَٰعٌ إِلَىٰ حِينٍ ﴿٢٥﴾

२५. उनले भने, "निस्केर जाऊ, तिमीहरूमध्ये केही व्यक्तिहरू अन्य केही व्यक्तिहरूका शत्रु रहनेछन् । तथा तिमीहरूका निम्ति यस पृथ्वीमा एउटा वासस्थान र केही समयका निम्ति खाद्य-

पेय (जीवनवृत्ति) राखिएकोछ ।"

قال فيها تحيون وفيها تموتون ومنها تخرجون ﴿٢٥﴾

२६. उनले भने, "त्यहाँ नै तिमीहरू जीवित रहनेछौ तथा त्यहाँ नै तिमीहरूको मृत्यु हुनेछ, तथा त्यहाँबाट नै तिमीहरूलाई निकालिनेछ ।

يبني ادم قد انزلنا عليكم لباسا يواري سواتكم وريشا ولباس التقوى ذلك خير ذلك من ايت الله لعلهم يذكرون ﴿٢٦﴾

२७. हे आदमका सन्तान हो ! वस्तुत: हामीले तिमीहरूप्रति तिमीहरूको लाज ढाक्न र सौन्दर्यपूर्ण वेषभूषास्वरूप वस्त्र अवतीर्ण गरेका छौं; परन्तु सत्यनिष्ठताको वस्त्र नै सर्वोत्तम वस्तु रहेको छ । त्यो अल्लाहका चिह्नहरूमध्ये (एक) रहेको छ, ताकि तिनीहरू स्मरण गर्न सकून् ।

يبني ادم لا يفتننكم الشيطن كما اخرج ابويكم من الجنة ينزع عنهما لباسهما ليريهما سواتهما انه يرىكم هو وقبيله من حيث لا ترونهم انا جعلنا الشيطين اولياء للذين لا يؤمنون ﴿٢٧﴾

२८. हे आदमका सन्तान हो ! सैतानले तिमीहरूलाई त्यसरी नबहकाओस्, जसरी उसले तिमीहरूका पितृ मातृहरूलाई बगैंचाबाट निकालेको थियो र तिनीहरूप्रति तिनीहरूको नग्नता प्रकट गर्नका निम्ति तिनीहरूबाट तिनको वस्त्र खोसेको थियो । वास्तवमा उसले तिमीहरूलाई (त्यहाँबाट) देख्छ, उसले र उसका समूहले, जहाँबाट तिमीहरू तिनीहरूलाई देख्दैनौ । निश्चय नै, हामीले सैतानहरूलाई ती व्यक्तिहरूका मित्र बनाएका छौं जसले विश्वास गर्दैनन् ।

واذا فعلوا فاحشة قالوا وجدنا عليها اباءنا والله امرنا بها قل ان الله لا يامر بالفحشاء اتقولون على الله ما لا تعلمون ﴿٢٨﴾

२९. तथा जब तिनीहरू कुनै निर्लज्जतापूर्ण कार्य गर्छन् तिनीहरू के भन्छन् भने, "हामीले हाम्रा पुर्खाहरूले यसै गर्दै आएका पाएका छौं, तथा अल्लाहले हामीलाई यसै गर्ने आदेश दिएका छन् ।" तिमी भन, "अल्लाहले निर्लज्जतापूर्ण कार्य गर्ने आदेश कदापि दिंदैनन् । के जुन कुराको ज्ञान तिमीहरूलाई प्राप्त छैन, अल्लाहका सम्बन्धमा तिमीहरू त्यो कुरा गर्छौ?

قُلْ اَمَرَ رَبِّيْ بِالْقِسْطِ ۗ وَ اَقِيْمُوْا وُجُوْهَكُمْ عِنْدَ كُلِّ مَسْجِدٍ وَّادْعُوْهُ مُخْلِصِيْنَ لَهُ الدِّيْنَ ۚ كَمَا بَدَاَكُمْ تَعُوْدُوْنَ ﴿٣٠﴾

३०. तिमी भन, "मेरा प्रतिपालकले न्यायको आदेश दिएका छन् । तथा प्रत्येक (समय र) मस्जिदमा उचित रूपमा आफ्नो ध्यान केन्द्रित गर्ने गर, तथा उनीप्रति धर्मभावले (पूर्णआस्था राखी) एकाग्रताका साथ उनैलाई पुकार । जसरी उनले तिमीहरूलाई सिर्जना गरेका थिए, त्यसरी नै तिमीहरू फर्कनेछौं ।"

فَرِيْقًا هَدٰى وَ فَرِيْقًا حَقَّ عَلَيْهِمُ الضَّلٰلَةُ ۚ اِنَّهُمُ اتَّخَذُوا الشَّيٰطِيْنَ اَوْلِيَآءَ مِنْ دُوْنِ اللّٰهِ وَ يَحْسَبُوْنَ اَنَّهُمْ مُّهْتَدُوْنَ ﴿٣١﴾

३१. केही व्यक्तिहरूलाई उनले सन्मार्ग देखाएका छन्, तथा अन्य केही व्यक्तिहरूमाथि (भने) पथभ्रष्टता सिद्ध भएको छ । तिनीहरूले अल्लाहलाई छाडी दुष्कर्मीहरूलाई मित्र बनाएका छन्, तथा तिनीहरू स्वयम्‌लाई सन्मार्ग प्राप्त भनी ठान्छन् ।

يٰبَنِيْٓ اٰدَمَ خُذُوْا زِيْنَتَكُمْ عِنْدَ كُلِّ مَسْجِدٍ وَّكُلُوْا وَاشْرَبُوْا وَلَا تُسْرِفُوْا ۚ اِنَّهُ لَا يُحِبُّ الْمُسْرِفِيْنَ ﴿٣٢﴾

३२. हे आदमका सन्तान हो ! हरेक (समय तथा) मस्जिदमा आफ्नो वेषभूषाको ख्याल गर्ने गर, तथा खाऊ र पिऊ परन्तु अपव्यय भने नगर; निश्चय नै, उनी अपव्यय गर्ने व्यक्तिहरूलाई मनपराउँदैनन् ।

قُلْ مَنْ حَرَّمَ زِيْنَةَ اللّٰهِ الَّتِيْٓ اَخْرَجَ لِعِبَادِهٖ وَالطَّيِّبٰتِ مِنَ الرِّزْقِ ۚ قُلْ هِيَ لِلَّذِيْنَ اٰمَنُوْا فِي الْحَيٰوةِ الدُّنْيَا خَالِصَةً يَّوْمَ الْقِيٰمَةِ ۚ كَذٰلِكَ نُفَصِّلُ الْاٰيٰتِ لِقَوْمٍ يَّعْلَمُوْنَ ﴿٣٣﴾

३३. तिमी भन, "अल्लाहको त्यस सौन्दर्यलाई जुन उनले आफ्ना भक्तहरूका निम्ति उत्पन्न गरेका छन् तथा (उनीद्वारा प्रदत्त) खाद्यान्नमध्ये पवित्र वस्तुहरूलाई कसले अवैध ठहऱ्याएको छ? तिमी भन, "ती वस्तुहरू यस संसारमा विश्वासीहरूका निम्ति रहेका छन् (तथा) पुनरुत्थानका दिन केवल -तिनीहरूका निम्ति) हुनेछन् । यसै प्रकार ज्ञानी व्यक्तिहरूका निम्ति हामी आफ्ना चिह्नहरू विस्तृतरूपमा वर्णन गर्छौं ।"

قُلْ اِنَّمَا حَرَّمَ رَبِّيَ الْفَوَاحِشَ مَا ظَهَرَ مِنْهَا وَ مَا بَطَنَ وَ الْاِثْمَ وَ الْبَغْيَ بِغَيْرِ

३४. तिमी भन, "मेरा अल्लाहले केवल निर्लज्जापूर्ण कार्यहरूलाई अवैध ठहऱ्याएका छन् चाहे ती प्रकाश्य रहून् अथवा गुप्त, तथा

पाप र अन्यायपूर्वक गरिने विद्रोहलाई तथा तिमीहरूद्वारा त्यस वस्तुलाई अल्लाहको भागीदार बनाउनुलाई जसका सम्बन्धमा उनले कुनै प्रमाण (तर्क) अवतीर्ण गरेका छैनन्, तथा तिमीहरूद्वारा अल्लाहका सम्बन्धमा यस्ता कुराहरू गर्नुलाई जसबारे तिमीहरूलाई ज्ञान प्राप्त छैन ।"

الْحَقِّ وَأَنْ تُشْرِكُوا بِاللَّهِ مَا لَمْ يُنَزِّلْ بِهِ سُلْطَانًا وَأَنْ تَقُولُوا عَلَى اللَّهِ مَا لَا تَعْلَمُونَ ﴿٣٣﴾

३५. तथा हरेक जातिका निम्ति एउटा म्याद निर्धारित छ, तथा जब तिनीहरूको म्याद आउँछ, तिनीहरू न एकघडीपछि रहन सक्छन् न त (त्यसबाट) अघि बढ्न सक्छन्

وَلِكُلِّ أُمَّةٍ أَجَلٌ ۖ فَإِذَا جَاءَ أَجَلُهُمْ لَا يَسْتَأْخِرُونَ سَاعَةً ۖ وَلَا يَسْتَقْدِمُونَ ﴿٣٤﴾

३६. हे आदमका सन्तान हो ! यदि तिमीहरूसमक्ष तिमीहरूमध्येकै सन्देशवाहक मेरा चिह्नहरू तिमीहरूप्रति पढेर सुनाउन आएमा जसले अल्लाहको डर राख्नेछ तथा पुण्यकार्य गर्नेछ तिनीहरूप्रति कुनै त्रास (आउने) छैन न ता तिनीहरू शोकग्रस्त हुन्छन् ।

يَا بَنِي آدَمَ إِمَّا يَأْتِيَنَّكُمْ رُسُلٌ مِنْكُمْ يَقُصُّونَ عَلَيْكُمْ آيَاتِي ۙ فَمَنِ اتَّقَىٰ وَأَصْلَحَ فَلَا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُونَ ﴿٣٥﴾

३७. परन्तु ती व्यक्तिहरू जसले हाम्रा चिह्नहरूलाई अस्वीकार गर्छन् तथा अहङ्कारका साथ तिनीहरूबाट विमुख हुन्छन्, तिनीहरू अग्निका निवासी बन्नेछन्; त्यहाँ तिनीहरू बसोबास गर्नेछन् ।

وَالَّذِينَ كَذَّبُوا بِآيَاتِنَا وَاسْتَكْبَرُوا عَنْهَا أُولَٰئِكَ أَصْحَابُ النَّارِ ۖ هُمْ فِيهَا خَالِدُونَ ﴿٣٦﴾

३८. अतः त्यो व्यक्तिभन्दा अधिक अत्याचारी को हुनसक्छ र जसले अल्लाहविरुद्ध मिथ्या गढ्छ अथवा उनका चिह्नहरूलाई मिथ्या ठहराउँछ? ती व्यक्तिहरू नै हुन् जसलाई तबसम्म निर्धारित दण्डभाग मिल्दै रहनेछ जबसम्म हाम्रा दूतहरू तिनीहरूसमक्ष तिनीहरूको प्राण लिनका निम्ति उपस्थित हुँदैनन् तिनीहरूले भन्नेछन् "कहाँ छ त्यो जसलाई तिमीहरू अल्लाहका स्थानमा पुकार्ने

فَمَنْ أَظْلَمُ مِمَّنِ افْتَرَىٰ عَلَى اللَّهِ كَذِبًا أَوْ كَذَّبَ بِآيَاتِهِ ۚ أُولَٰئِكَ يَنَالُهُمْ نَصِيبُهُمْ مِنَ الْكِتَابِ ۖ حَتَّىٰ إِذَا جَاءَتْهُمْ رُسُلُنَا يَتَوَفَّوْنَهُمْ ۙ قَالُوا أَيْنَ مَا كُنْتُمْ تَدْعُونَ مِنْ دُونِ اللَّهِ ۖ قَالُوا ضَلُّوا عَنَّا وَشَهِدُوا عَلَىٰ أَنْفُسِهِمْ أَنَّهُمْ كَانُوا كَافِرِينَ ﴿٣٧﴾

गर्थ्यौ?" तिनीहरूले उत्तर दिनेछन् "हामीबाट तिनीहरू पूर्णरूपमा हराएका छन् ।" तथा तिनीहरू अविश्वासी थिए भनी तिनीहरूले आफ्नै विरुद्ध साक्षी दिनेछन् ।

قَالَ ادْخُلُوا فِيٓ أُمَمٍ قَدْ خَلَتْ مِنْ قَبْلِكُمْ مِّنَ الْجِنِّ وَالْإِنْسِ فِي النَّارِ ۖ كُلَّمَا دَخَلَتْ أُمَّةٌ لَّعَنَتْ أُخْتَهَا ۖ حَتّٰىٓ إِذَا ادَّارَكُوْا فِيْهَا جَمِيْعًا ۙ قَالَتْ أُخْرٰىهُمْ لِأُوْلٰىهُمْ رَبَّنَا هٰٓؤُلَآءِ أَضَلُّوْنَا فَاٰتِهِمْ عَذَابًا ضِعْفًا مِّنَ النَّارِ ۚ قَالَ لِكُلٍّ ضِعْفٌ وَّلٰكِنْ لَّا تَعْلَمُوْنَ ﴿٣٨﴾

३९. उनले भन्नेछन्, "तिमीहरू जिन्न र मानिसका ती जातिहरूका साथ जसले तिमीहरू भन्दा पहिला मृत्युप्राप्त गरिसकेका छन्, अग्निमा प्रवेश गर ।" जब कुनै जाति प्रवेश गर्नेछ त्यसले आफ्ना निकटका पहिलो जाति (भगिनी जाति) लाई श्राप दिनेछ । अत: जब तिनीहरू सबै एकपछि अर्को गर्दै त्यहाँ पुग्नेछन्, तब तिनीहरूमध्ये अन्तिमले पहिलोको सम्बन्धमा भन्नेछ: "हे हाम्रा अल्लाह, यिनीहरूले हामीलाई पथभ्रष्ट तुल्याए त्यसकारण यिनीहरूलाई तिमी दोबर अग्निको दण्ड देउ ।" उनले भन्नेछन्, "प्रत्येक (पूर्वगामी जाति) लाई दोब्बर (दण्ड) मिल्नेछ, परन्तु तिमीहरू जान्दैनौ ।"

وَقَالَتْ أُوْلٰىهُمْ لِأُخْرٰىهُمْ فَمَا كَانَ لَكُمْ عَلَيْنَا مِنْ فَضْلٍ فَذُوْقُوا الْعَذَابَ بِمَا كُنْتُمْ تَكْسِبُوْنَ ﴿٣٩﴾ ع ٤

४०. तथा तिनीहरूमध्ये पहिलोले अन्तिमलाई भन्नेछ: तिमीहरूलाई हामीमाथि कुनै प्राधान्यता प्राप्त छैन: अत: तिमीहरू आफूले गरेका सम्पूर्ण कार्यहरूका कारण दण्ड चाख ।"

إِنَّ الَّذِيْنَ كَذَّبُوْا بِاٰيٰتِنَا وَاسْتَكْبَرُوْا عَنْهَا لَا تُفَتَّحُ لَهُمْ أَبْوَابُ السَّمَآءِ وَلَا يَدْخُلُوْنَ الْجَنَّةَ حَتّٰى يَلِجَ الْجَمَلُ فِيْ سَمِّ الْخِيَاطِ ۚ وَكَذٰلِكَ نَجْزِي الْمُجْرِمِيْنَ ﴿٤٠﴾

४१. ती व्यक्तिहरू जसले हाम्रा चिह्नहरूलाई अस्वीकार गर्छन् तथा तिनीहरूवाट अहङ्कारका साथ विमुख हुन्छन्, तिनीहरूका निम्ति आकाशका ढोकाहरू खोलिने छैनन्, तिनीहरू स्वर्गमा तवसम्म प्रवेश गर्न सक्नेछैनन् जवसम्म एउटा उँट सियोको प्वालमा प्रवेश गर्दैन । तथा यसै प्रकार हामी अपराधीहरूसँग प्रतिशोध लिन्छौं ।

४२. तिनीहरूको बिछौना नर्क नै हुनेछ, तथा (त्यही नै) तिनीहरूको ओढ्ने हुनेछ । तथा यसै प्रकार हामी अत्याचारीहरूलाई बदला दिन्छौं ।

لَهُم مِّن جَهَنَّمَ مِهَادٌ وَمِن فَوْقِهِمْ غَوَاشٍ ۚ وَكَذَٰلِكَ نَجْزِي الظَّالِمِينَ ﴿٤١﴾

४३. परन्तु ती व्यक्तिहरू जसले विश्वास गर्छन् तथा पुण्यकार्य गर्छन्– (तथा) कुनै प्राणीमाथि हामी त्यसको सामर्थ्यभन्दा अधिक जिम्मेवारी हाल्दैनौं– तिनीहरू नै स्वर्गका निवासी हुन्: त्यहाँ नै तिनीहरू सदा बसोबास गर्नेछन् ।

وَالَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ لَا نُكَلِّفُ نَفْسًا إِلَّا وُسْعَهَا أُولَٰئِكَ أَصْحَابُ الْجَنَّةِ ۖ هُمْ فِيهَا خَالِدُونَ ﴿٤٢﴾

४४. तिनीहरूका हृदयमा जे जस्ता द्वेषभावहरू छन् हामी ती सम्पूर्णलाई बाहिर निकाल्नेछौं । तिनीहरूका मुनिबाट नहरहरू बग्नेछन् । तथा तिनीहरूले भन्नेछन्, "सम्पूर्ण प्रशंसाका स्वामी अल्लाह नै हुन् जसले हामीलाई यसतर्फ मार्गप्रदर्शन गरे । तथा यदि अल्लाहले हामीलाई मार्गप्रदर्शन नगरेका भए, हामीले कदापि सन्मार्ग प्राप्त गर्न सक्ने थिएनौं । हाम्रा पालनहारका सन्देशवाहकहरू निःसन्देह सत्य लिएर आएका थिए ।" तथा तिनीहरूसमक्ष यो घोषणा गरिनेछ: "तिमीहरूले गरेका कार्यहरूको प्रतिदान स्वरूप तिमीहरूलाई जसको उत्तराधिकारी बनाइएको छ त्यो स्वर्ग यही नै हो ।"

وَنَزَعْنَا مَا فِي صُدُورِهِم مِّنْ غِلٍّ تَجْرِي مِن تَحْتِهِمُ الْأَنْهَارُ ۖ وَقَالُوا الْحَمْدُ لِلَّهِ الَّذِي هَدَانَا لِهَٰذَا وَمَا كُنَّا لِنَهْتَدِيَ لَوْلَا أَنْ هَدَانَا اللَّهُ ۖ لَقَدْ جَاءَتْ رُسُلُ رَبِّنَا بِالْحَقِّ ۖ وَنُودُوا أَن تِلْكُمُ الْجَنَّةُ أُورِثْتُمُوهَا بِمَا كُنتُمْ تَعْمَلُونَ ﴿٤٣﴾

४५. तथा स्वर्गका निवासीहरूले नर्कका निवासीहरूलाई बोलाएर भन्नेछन्: "हाम्रा अल्लाहले हामीलाई जुन कुराको वचन दिएका थिए हामीले वस्तुतः त्यो सत्य रूपमा पायौं । के तिमीहरूले पनि तिमीहरूका प्रतिपालकले वचन दिएको कुरा सत्य पायौ?" तिनीहरूले भन्नेछन्: "हो ।" त्यसपछि तिनीहरूका बीच एउटा घोषणाकारले (के भन्दै घोषणा गर्नेछ भने, "अपराध गर्नेहरूमाथि अल्लाहको श्राप

وَنَادَىٰ أَصْحَابُ الْجَنَّةِ أَصْحَابَ النَّارِ أَن قَدْ وَجَدْنَا مَا وَعَدَنَا رَبُّنَا حَقًّا فَهَلْ وَجَدتُّم مَّا وَعَدَ رَبُّكُمْ حَقًّا ۖ قَالُوا نَعَمْ ۚ فَأَذَّنَ مُؤَذِّنٌ بَيْنَهُمْ أَن لَّعْنَةُ اللَّهِ عَلَى الظَّالِمِينَ ﴿٤٤﴾

रहेको छ ।"

४६. "जसले (मानिसहरूलाई) अल्लाहका मार्गबाट विमुख तुल्याउँछन् तथा जो त्यसलाई कुटिल बनाउन चाहन्छन्, तथा तिनीहरू परलोकका सम्बन्धमा अविश्वासी हुन् ।

الَّذِيْنَ يَصُدُّوْنَ عَنْ سَبِيْلِ اللّٰهِ وَيَبْغُوْنَهَا عِوَجًا ۚ وَهُمْ بِالْاٰخِرَةِ كٰفِرُوْنَ ﴿٤٥﴾

४७. तथा दुबै थरीबीच एउटा विभाजन (पर्खाल) हुनेछ, तथा उच्च स्थानहरूमा केही यस्ता व्यक्तिहरू रहनेछन् जसले तिनीहरू सबैलाई तिनका चिह्नहरूबाट सनाखत गर्नेछन् । तथा तिनीहरूले स्वर्गका निवासीहरूलाई पुकार्ने छन्, "तिमीहरूमाथि शान्ति (वर्षण) होस् ।" तिनीहरूले - तत्पर्यन्त) त्यसमा प्रवेश गरेका हुनेछैनन्, यद्यपि (त्यसप्रति) तिनीहरू पूर्ण आशावादी भने रहनेछन् ।

وَبَيْنَهُمَا حِجَابٌ ۚ وَعَلَى الْاَعْرَافِ رِجَالٌ يَّعْرِفُوْنَ كُلًّا بِسِيْمٰهُمْ ۚ وَنَادَوْا اَصْحٰبَ الْجَنَّةِ اَنْ سَلٰمٌ عَلَيْكُمْ ۚ لَمْ يَدْخُلُوْهَا وَهُمْ يَطْمَعُوْنَ ﴿٤٦﴾

४८. अनि जब तिनीहरूको दृष्टि नर्कका निवासीहरूतर्फ आकर्षित गरिनेछ, तब तिनीहरूले भन्नेछन्, "हे हाम्रा अल्लाह, हामीलाई ती अन्यायकारी व्यक्तिहरूमा सम्मिलित नगर ।"

وَاِذَا صُرِفَتْ اَبْصَارُهُمْ تِلْقَآءَ اَصْحٰبِ النَّارِ ۙ قَالُوْا رَبَّنَا لَا تَجْعَلْنَا مَعَ الْقَوْمِ الظّٰلِمِيْنَ ﴿٤٧﴾

४९. तथा उच्चस्थान स्थित व्यक्तिहरूले ती व्यक्तिहरूलाई जसलाई तिनीहरूका चिह्नबाट उनीहरूले सनाखत् गर्नेछन्, बोलाएर के भन्नेछन् भने, "न तिमीहरूको जत्थाले तिमीहरूलाई काम दियो न त तिमीहरूको अहङ्कारले नै ।

وَنَادٰٓى اَصْحٰبُ الْاَعْرَافِ رِجَالًا يَّعْرِفُوْنَهُمْ بِسِيْمٰهُمْ قَالُوْا مَآ اَغْنٰى عَنْكُمْ جَمْعُكُمْ وَمَا كُنْتُمْ تَسْتَكْبِرُوْنَ ﴿٤٨﴾

५०. "के यिनीहरू नै ती व्यक्तिहरू हुन् जसका सम्बन्धमा तिमीहरू अल्लाहले यिनीहरूप्रति करुणा गर्नेछैनन् भनी शपथ खाने गर्थ्यौ ? (तिनीहरूलाई के भनिएको छ भने), "स्वर्गमा प्रवेश गर; तिमीहरूप्रति कुनै त्रास (आउने) छैन, न त तिमीहरू

اَهٰٓؤُلَآءِ الَّذِيْنَ اَقْسَمْتُمْ لَا يَنَالُهُمُ اللّٰهُ بِرَحْمَةٍ ۚ اُدْخُلُوا الْجَنَّةَ لَا خَوْفٌ عَلَيْكُمْ وَلَآ اَنْتُمْ تَحْزَنُوْنَ ﴿٤٩﴾

शोकग्रस्त हुनेछौ ।"

५१. तथा अग्निका निवासीहरूले स्वर्गका निवासीहरूलाई पुकार्दै भन्नेछन्, "हामीलाई केही पानी प्रदान गर अथवा तिमीहरूलाई अल्लाहले प्रदान गरेका वस्तुहरूबाट हामीलाई केही त प्रदान गर ।" तिनीहरूले भन्नेछन्, निश्चय नै, यी दुबै वस्तुहरू अल्लाहले अविश्वासीहरूका निम्ति निषिद्ध गरेका छन्-

وَنَادَىٰٓ أَصْحَٰبُ ٱلنَّارِ أَصْحَٰبَ ٱلْجَنَّةِ أَنْ أَفِيضُوا۟ عَلَيْنَا مِنَ ٱلْمَآءِ أَوْ مِمَّا رَزَقَكُمُ ٱللَّهُ ۚ قَالُوٓا۟ إِنَّ ٱللَّهَ حَرَّمَهُمَا عَلَى ٱلْكَٰفِرِينَ ﴿٥١﴾

५२. "ती व्यक्तिहरू जसले आफ्नो धर्मलाई आमोद-प्रमोद र किडास्वरूप लिए, तथा जसलाई साँसारिक जीवनले भ्रममा पारेको थियो ।" अतः आज, हामी पनि तिनीहरूलाई त्यसरी नै बिर्सनेछौं जसरी तिनीहरूले आफूले यसरी साक्षात्कार गर्ने दिनलाई बिर्सिएका थिए, तथा जसरी तिनीहरू हाम्रा चिह्नहरूलाई अस्वीकार गर्ने गर्थे ।

ٱلَّذِينَ ٱتَّخَذُوا۟ دِينَهُمْ لَهْوًا وَلَعِبًا وَغَرَّتْهُمُ ٱلْحَيَوٰةُ ٱلدُّنْيَا ۚ فَٱلْيَوْمَ نَنسَىٰهُمْ كَمَا نَسُوا۟ لِقَآءَ يَوْمِهِمْ هَٰذَا وَمَا كَانُوا۟ بِـَٔايَٰتِنَا يَجْحَدُونَ ﴿٥٢﴾

५३. निश्चय नै, तथा हामीले तिनीहरूलाई एउटा यस्तो पुस्तक प्रदान गरेका छौं जसलाई हामीले ज्ञानद्वारा पूर्ण व्याख्या गरेका छौं, जुन विश्वासी व्यक्तिहरूका निम्ति एउटा मार्गदर्शन तथा करुणास्वरूप रहेको छ ।

وَلَقَدْ جِئْنَٰهُم بِكِتَٰبٍ فَصَّلْنَٰهُ عَلَىٰ عِلْمٍ هُدًى وَرَحْمَةً لِّقَوْمٍ يُؤْمِنُونَ ﴿٥٣﴾

५४. के तिनीहरू केवल त्यसमा रहेका (चेतावनीहरूको) पूर्ण हुने (क्षणलाई) मात्र पर्खिरहेछन् त? जब त्यो पूर्ण हुने (क्षण) आउँछ, (तब) त्यस दिनलाई त्यसअघि बिर्सिएकाहरूले भन्नेछन्, "हाम्रा अल्लाहका सन्देशवाहकहरूले निःसन्देह नै सत्यलाई साथमा ल्याएका थिए । अतः के हाम्रा निम्ति कुनै मध्यस्थताकर्ता छन् जसल हाम्रो सिफारिस गरुन्? अथवा जुन कार्यहरू हामी गर्ने गर्थ्यौं तिनका स्थानमा अन्य

هَلْ يَنظُرُونَ إِلَّا تَأْوِيلَهُۥ ۚ يَوْمَ يَأْتِى تَأْوِيلُهُۥ يَقُولُ ٱلَّذِينَ نَسُوهُ مِن قَبْلُ قَدْ جَآءَتْ رُسُلُ رَبِّنَا بِٱلْحَقِّ فَهَل لَّنَا مِن شُفَعَآءَ فَيَشْفَعُوا۟ لَنَآ أَوْ نُرَدُّ فَنَعْمَلَ غَيْرَ ٱلَّذِى كُنَّا نَعْمَلُ ۚ قَدْ خَسِرُوٓا۟ أَنفُسَهُمْ وَضَلَّ عَنْهُم مَّا كَانُوا۟ يَفْتَرُونَ ﴿٥٤﴾

कार्यहरू गर्नका निम्ति के हामीलाई फर्काइनेछ?" तिनीहरूले वास्तवमा आफ्ना आत्मालाई नाश गरेका छन् तथा तिनीहरूले जे-जे गढ्ने गरेका थिए ती (कुराहरू) तिनीहरूबाट गुम्न पुगेका छन् ।

إِنَّ رَبَّكُمُ اللّٰهُ الَّذِيْ خَلَقَ السَّمٰوٰتِ وَ
الْاَرْضَ فِيْ سِتَّةِ اَيَّامٍ ثُمَّ اسْتَوٰى عَلَى
الْعَرْشِ يُغْشِي الَّيْلَ النَّهَارَ يَطْلُبُهٗ
حَثِيْثًا وَّ الشَّمْسَ وَالْقَمَرَ وَالنُّجُوْمَ
مُسَخَّرٰتٍۭ بِاَمْرِهٖ اَلَا لَهُ الْخَلْقُ وَ
الْاَمْرُ تَبٰرَكَ اللّٰهُ رَبُّ الْعٰلَمِيْنَ ﴿٥٤﴾

५५. निश्चय नै, तिमीहरूका अल्लाह तिनै अल्लाह हुन् जसले आकाशमण्डल र पृथ्वीको छ अवधिमा सिर्जना गरे; त्यसपछि स्वयम्लाई सिंहासनमा प्रतिष्ठित तुल्याए । रात्रिलाई उनी दिनको आवरणस्वरूप बनाउँछन्, जसले त्यसलाई द्रुतगतिले अनुसरण गर्छ तथा (उनले) सूर्य र चन्द्र तथा ताराहरू (यसप्रकार सिर्जना गरेका छन् सबै) उनकै आदेशअन्तर्गत कार्यरत छन् । वास्तवमा सृष्टि र विधान उनकै हुन् । सम्पूर्ण ब्रह्माण्डका स्वामी, अल्लाह परम मङ्गलमय रहेका छन् ।

اُدْعُوْا رَبَّكُمْ تَضَرُّعًا وَّ خُفْيَةً اِنَّهٗ لَا
يُحِبُّ الْمُعْتَدِيْنَ ﴿٥٥﴾

५६. तिमीहरू आफ्ना अल्लाहलाई विनम्रपूर्वक तथा गुप्तरूपमा पुकार्ने गर । सीमोल्लङ्घनकारीहरूलाई उनी मन पराउँदैनन् ।

وَلَا تُفْسِدُوْا فِي الْاَرْضِ بَعْدَ اِصْلَاحِهَا
وَادْعُوْهُ خَوْفًا وَّ طَمَعًا اِنَّ رَحْمَتَ
اللّٰهِ قَرِيْبٌ مِّنَ الْمُحْسِنِيْنَ ﴿٥٦﴾

५७. तथा पृथ्वीमा शान्ति सुव्यवस्था स्थापना भएपश्चात् त्यहाँ अशान्ति उत्पन्न नगर तथा उनलाई भय र आशाका साथ पुकार । अल्लाहको करुणा निश्चय नै पुण्यकर्मीहरूका निकट रहेको छ ।

وَهُوَ الَّذِيْ يُرْسِلُ الرِّيٰحَ بُشْرًاۢ بَيْنَ
يَدَيْ رَحْمَتِهٖ حَتّٰى اِذَا اَقَلَّتْ سَحَابًا
ثِقَالًا سُقْنٰهُ لِبَلَدٍ مَّيِّتٍ فَاَنْزَلْنَا
بِهِ الْمَآءَ فَاَخْرَجْنَا بِهٖ مِنْ كُلِّ
الثَّمَرٰتِ كَذٰلِكَ نُخْرِجُ الْمَوْتٰى
لَعَلَّكُمْ تَذَكَّرُوْنَ ﴿٥٧﴾

५८. ती उनी नै हुन् जसले शुभसन्देशस्वरूप बतासलाई आफ्नो करुणाभन्दा अघि पठाउँछन्, अत: जब तिनीहरूले बोझिलो बादललाई उठाउँछन् तिनीहरूलाई हामी एउटा मृत भूसतहतर्फ चलाएर लैजान्छौं, त्यसपछि हामी त्यसबाट पानी अवतीर्ण गर्छौं, तथा त्यसद्वारा हामी हरप्रकारका फलहरू निकाल्छौं । यसै प्रकार

وَالْبَلَدُ الطَّيِّبُ يَخْرُجُ نَبَاتُهُ بِإِذْنِ رَبِّهٖ ۚ وَالَّذِيْ خَبُثَ لَا يَخْرُجُ إِلَّا نَكِدًا ۚ كَذٰلِكَ نُصَرِّفُ الْاٰيٰتِ لِقَوْمٍ يَّشْكُرُوْنَ ﴿٥٨﴾

पानी अवतीर्ण गर्छौं, तथा त्यसद्वारा हामी हरप्रकारका फलहरू निकाल्छौं । यसै प्रकार हामी मृतकलाई निकाल्छौं ताकि तिमीहरू स्मरण गर्न सक ।

५९. तथा -जुन) भूमि उत्तम (उब्जाउ) रहेको छ, त्यसले आफ्नो वनस्पति आफ्ना अल्लाहको आदेशानुसार (प्रचुररूपमा) निकाल्छ, तथा जुन खराब रहेको छ, (त्यसको वनस्पति) केवल छिटपूट रूपमा नै उत्पन्न हुन्छ । यसै प्रकार हामी कृतज्ञ व्यक्तिहरूका निम्ति चिह्नहरूको (बारम्बार) वर्णन गर्छौं ।

لَقَدْ اَرْسَلْنَا نُوْحًا اِلٰى قَوْمِهٖ فَقَالَ يٰقَوْمِ اعْبُدُوا اللّٰهَ مَا لَكُمْ مِّنْ اِلٰهٍ غَيْرُهٗ ۚ اِنِّيْٓ اَخَافُ عَلَيْكُمْ عَذَابَ يَوْمٍ عَظِيْمٍ ﴿٥٩﴾

६०. हामीले नूहलाई उनका मानिसहरू कहाँ पठायौं तथा उनले भने, "हे मेरा मानिसहरू हो, अल्लाहको उपासना गर, उनीबाहेक तिमीहरूको अन्य कोही उपास्य छैन । निश्चय नै म तिमीहरूमाथि आउने भयानक दिनको दण्डप्रति डराउँछु ।"

قَالَ الْمَلَاُ مِنْ قَوْمِهٖٓ اِنَّا لَنَرٰىكَ فِيْ ضَلٰلٍ مُّبِيْنٍ ﴿٦٠﴾

६१. उनका जातिका मुखियाहरूले भने, "हामी निःसन्देह तिमीलाई स्पष्ट विपथगामी भएको देख्छौं ।"

قَالَ يٰقَوْمِ لَيْسَ بِيْ ضَلٰلَةٌ وَّلٰكِنِّيْ رَسُوْلٌ مِّنْ رَّبِّ الْعٰلَمِيْنَ ﴿٦١﴾

६२. उनले भने, "हे मेरा जातिका मानिसहरू हो, ममा कुनै प्रकारको भ्रान्ति छैन, अपितु म सम्पूर्ण ब्रह्माण्डका पालनहारका तर्फबाट एकजना सन्देशवाहक हुँ ।

اُبَلِّغُكُمْ رِسٰلٰتِ رَبِّيْ وَاَنْصَحُ لَكُمْ وَاَعْلَمُ مِنَ اللّٰهِ مَا لَا تَعْلَمُوْنَ ﴿٦٢﴾

६३. "म तिमीहरूसमक्ष आफ्ना अल्लाहको सन्देशहरू पुऱ्याउँछु तथा तिमीहरूलाई साँचो उपदेश दिन्छु तथा मलाई अल्लाहका तर्फबाट त्यो ज्ञान प्राप्त छ जुन (ज्ञान) तिमीहरूलाई प्राप्त छैन ।

اَوَعَجِبْتُمْ اَنْ جَآءَكُمْ ذِكْرٌ مِّنْ رَّبِّكُمْ
عَلٰى رَجُلٍ مِّنْكُمْ لِيُنْذِرَكُمْ وَ
لِتَتَّقُوْا وَلَعَلَّكُمْ تُرْحَمُوْنَ ﴿٦٣﴾

६४. "के तिमीहरूमध्येकै एकजना मानिसमार्फत् तिमीहरूलाई सतर्क गर्नका निम्ति तथा तिमीहरू अल्लाहसित डराउनेछौ भनी र तिमीहरूप्रति करुणा गरियोस् भनी तिमीहरूका प्रतिपालकका तर्फबाट उपदेशको आगमन भएकोमा तिमीहरू अचम्भित हुन्छौ त?"

فَكَذَّبُوْهُ فَاَنْجَيْنٰهُ وَالَّذِيْنَ مَعَهٗ
فِى الْفُلْكِ وَاَغْرَقْنَا الَّذِيْنَ كَذَّبُوْا
بِاٰيٰتِنَا ؕ اِنَّهُمْ كَانُوْا قَوْمًا عَمِيْنَ ﴿٦٤﴾

६५. परन्तु तिनीहरूले उनलाई मिथ्यावादीताको आरोप लगाए, अत: हामीले उनलाई तथा उनीसँग नौकामा सवार व्यक्तिहरूलाई सुरक्षा प्रदान गऱ्यौं, तथा जसले हाम्रा चिह्नहरूलाई अस्वीकार गरेका थिए हामीले तिनीहरूलाई डुबायौं । तिनीहरू नि:सन्देह अन्ध मानिसहरू थिए ।

وَاِلٰى عَادٍ اَخَاهُمْ هُوْدًا ؕ قَالَ يٰقَوْمِ
اعْبُدُوا اللّٰهَ مَا لَكُمْ مِّنْ اِلٰهٍ
غَيْرُهٗ ؕ اَفَلَا تَتَّقُوْنَ ﴿٦٥﴾

६६. तथा -हामीले) आद्तर्फ तिनीहरूका भाइ हूद्लाई (पठायौं) । उनले भने, "हे मेरा जातिका मानिसहरू हो, अल्लाहको उपासना गर" उनीबाहेक तिमीहरूको अन्य कोही उपास्य छैन । त्यसो भए के तिमीहरू अल्लाहको डर राख्दैनौ?"

قَالَ الْمَلَاُ الَّذِيْنَ كَفَرُوْا مِنْ قَوْمِهٖۤ
اِنَّا لَنَرٰىكَ فِىْ سَفَاهَةٍ وَّاِنَّا لَنَظُنُّكَ
مِنَ الْكٰذِبِيْنَ ﴿٦٦﴾

६७. तिनका जातिका मानिसहरूमध्ये अविश्वासी मुखियाहरूले भने, "हामी तिमीलाई नि:सन्देह मूर्खतापूर्ण (अवस्थामा) देख्छौं तथा निश्चय नै हामी तिमीलाई मिथ्यावादीमध्येका (एक) रहेको ठान्दछौं ।"

قَالَ يٰقَوْمِ لَيْسَ بِىْ سَفَاهَةٌ وَّلٰكِنِّىْ
رَسُوْلٌ مِّنْ رَّبِّ الْعٰلَمِيْنَ ﴿٦٧﴾

६८. उनले उत्तर दिए, "हे मेरा मानिसहरू हो, ममा कुनै मूर्खता छैन, अपितु म सम्पूर्ण ब्रह्माण्डका पालनहारका तर्फबाट एकजना सन्देशवाहक हुँ ।

اُبَلِّغُكُمْ رِسٰلٰتِ رَبِّىْ وَاَنَا لَكُمْ نَاصِحٌ
اَمِيْنٌ ﴿٦٨﴾

६९. "म तिमीहरूसमक्ष आफ्ना अल्लाहको सन्देशहरू पुऱ्याउँछु तथा तिमीहरूका निम्ति म एउटा इमान्दार तथा विश्वस्त

उपदेशक हुँ ।

أَوَعَجِبْتُمْ أَنْ جَآءَكُمْ ذِكْرٌ مِّنْ رَّبِّكُمْ عَلٰى رَجُلٍ مِّنْكُمْ لِيُنْذِرَكُمْ ؕ وَاذْكُرُوْٓا اِذْ جَعَلَكُمْ خُلَفَآءَ مِنْۢ بَعْدِ قَوْمِ نُوْحٍ وَّزَادَكُمْ فِى الْخَلْقِ بَصْۜطَةً ۚ فَاذْكُرُوْٓا اٰلَآءَ اللّٰهِ لَعَلَّكُمْ تُفْلِحُوْنَ (٧٠)

७०. "के तिमीहरूमध्येकै एकजना मानिसमार्फत् तिमीहरूका अल्लाहका तर्फबाट तिमीहरूलाई सतर्क गर्नका निम्ति उपदेशको आगमन भएकोमा तिमीहरू अचम्मित हुन्छौं त? तथा (त्यस समयको) स्मरण गर जब उनले नूह्का जातिका मानिसहरूपछि तिमीहरूलाई (आफ्नो अनुग्रहका) उत्तराधिकारी बनाएका थिए तथा तिमीहरूलाई वंशको आधारमा सम्पन्न तुल्याएका थिए । अतः अल्लाहको अनुग्रहलाई स्मरण गर, ताकि तिमीहरू कृतकार्य बन्न सक ।"

قَالُوْٓا اَجِئْتَنَا لِنَعْبُدَ اللّٰهَ وَحْدَهٗ وَنَذَرَ مَا كَانَ يَعْبُدُ اٰبَآؤُنَا ۚ فَأْتِنَا بِمَا تَعِدُنَآ اِنْ كُنْتَ مِنَ الصّٰدِقِيْنَ (٧١)

७१. तिनीहरूले भने, "के तिमी हामीसमक्ष हामी केवल एक अल्लाहको उपासना गरौं तथा हाम्रा पितृहरूले जसको उपासना गर्ने गर्थे तिनलाई परित्याग गरौं भनी आएका हौ? त्यसोभए जुन कुराको त्रास तिमी हामीलाई देखाउँछौं यदि तिमी साँचा (व्यक्ति)हरू मध्येका हौ भने त्यो कुरा हामीसमक्ष प्रस्तुत गर ।"

قَالَ قَدْ وَقَعَ عَلَيْكُمْ مِّنْ رَّبِّكُمْ رِجْسٌ وَّغَضَبٌ ؕ اَتُجَادِلُوْنَنِيْ فِيْٓ اَسْمَآءٍ سَمَّيْتُمُوْهَآ اَنْتُمْ وَاٰبَآؤُكُمْ مَّا نَزَّلَ اللّٰهُ بِهَا مِنْ سُلْطٰنٍ ؕ فَانْتَظِرُوْٓا اِنِّيْ مَعَكُمْ مِّنَ الْمُنْتَظِرِيْنَ (٧٢)

७२. उनले उत्तर दिए, "निश्चय नै, तिमीहरूका अल्लाहका तर्फबाट (यसअघि नै) दण्ड र प्रकोप वर्षण भइसकेको छ । के तिमीहरू मसँग ती नामहरूका निम्ति विवाद गर्छौं जुन तिमीहरूले– तिमीहरूले तथा तिमीहरूका पितृहरूले– गढेका थिए, जसका सम्बन्धमा अल्लाहले कुनै प्रमाण अवतीर्ण गरेका छैनन्? त्यसो भए तिमीहरू प्रतीक्षा गर, म तिमीहरूसँग ती व्यक्तिहरूमध्ये रहेको छु जसले प्रतीक्षा गर्छन् ।"

فَاَنْجَيْنٰهُ وَالَّذِيْنَ مَعَهٗ بِرَحْمَةٍ مِّنَّا

७३. तथा हामीले उनलाई र उनीसँग रहेका व्यक्तिहरूलाई आफ्नो करुणाद्वारा

وَقَطَعْنَا دَابِرَ الَّذِينَ كَذَّبُوا بِآيَاتِنَا وَمَا كَانُوا مُؤْمِنِينَ ﴿٧٢﴾

रक्षा गऱ्यौं, तथा जसले हाम्रा चिह्नहरूलाई अस्वीकार गरेका थिए तिनीहरूको अन्तिम जडसमेत हामीले काटिदियौं । तथा तिनीहरू विश्वासी थिएनन् ।

وَإِلَىٰ ثَمُودَ أَخَاهُمْ صَالِحًا ۗ قَالَ يَا قَوْمِ اعْبُدُوا اللَّهَ مَا لَكُم مِّنْ إِلَٰهٍ غَيْرُهُ ۖ قَدْ جَاءَتْكُم بَيِّنَةٌ مِّن رَّبِّكُمْ ۖ هَٰذِهِ نَاقَةُ اللَّهِ لَكُمْ آيَةً ۖ فَذَرُوهَا تَأْكُلْ فِي أَرْضِ اللَّهِ ۖ وَلَا تَمَسُّوهَا بِسُوءٍ فَيَأْخُذَكُمْ عَذَابٌ أَلِيمٌ ﴿٧٣﴾

७४. तथा समूदतर्फ (हामीले) तिनीहरूका भाइ सालिह्लाई (पठायौं) । उनले भने, "हे मेरा (जातिका) मानिसहरू हो ! अल्लाहको उपासना गर; उनीबाहेक तिमीहरूको अन्य कोही उपास्य छैन । निःसन्देह तिमीहरूसमक्ष तिमीहरूका अल्लाहका तर्फबाट एउटा स्पष्ट प्रमाण आइसकेको छ- त्यो अल्लाहको पोथी उँट तिमीहरूका निम्ति एउटा चिह्न रहेको छ । अतः त्यसलाई अल्लाहका भूमिमा चर्नका निम्ति छाडिदेऊ, तथा त्यसलाई कुनै हानि नपुऱ्याऊ, अन्यथा तिमीहरूलाई एउटा पीडादायक दण्ड मिल्नेछ ।

وَاذْكُرُوا إِذْ جَعَلَكُمْ خُلَفَاءَ مِن بَعْدِ عَادٍ وَبَوَّأَكُمْ فِي الْأَرْضِ تَتَّخِذُونَ مِن سُهُولِهَا قُصُورًا وَتَنْحِتُونَ الْجِبَالَ بُيُوتًا ۖ فَاذْكُرُوا آلَاءَ اللَّهِ وَلَا تَعْثَوْا فِي الْأَرْضِ مُفْسِدِينَ ﴿٧٤﴾

७५. तथा (त्यस समयको) स्मरण गर जब उनले आद्पछि तिमीहरूलाई (आफ्नो अनुग्रहका) उत्तराधिकारी बनाएका थिए, तथा पृथ्वीमा तिमीहरूलाई बास दिए, जसको समतल (भूमि)हरूमा तिमीहरू महल निर्माण गर्छौ तथा पहाडहरू खोपेर घर बनाउने गर्छौ । अतः अल्लाहको अनुग्रहलाई स्मरण गर तथा पृथ्वीमा फसादी बनी अशान्ति सृष्टि गर्ने नगर ।"

قَالَ الْمَلَأُ الَّذِينَ اسْتَكْبَرُوا مِن قَوْمِهِ لِلَّذِينَ اسْتُضْعِفُوا لِمَنْ آمَنَ مِنْهُمْ أَتَعْلَمُونَ أَنَّ صَالِحًا مُّرْسَلٌ مِّن رَّبِّهِ ۚ قَالُوا إِنَّا بِمَا أُرْسِلَ بِهِ مُؤْمِنُونَ ﴿٧٥﴾

७६. उनका जातिका ती प्रमुख (मुखिया) व्यक्तिहरू जसले अहङ्कार गर्ने गर्थे तिनीहरूमध्येका दुर्बल ठानिएका विश्वासी व्यक्तिहरूलाई भने, "के तिमीहरू (निश्चयपूर्वक) सालिह तिनका अल्लाहद्वारा पठाइएका हुन् भनी जान्दछौ?" तिनीहरूले उत्तर दिए, "जुन कुराका साथ उनलाई पठाइएको छ त्यसप्रति हामी निश्चय नै

विश्वास गर्छौं ।"

قَالَ الَّذِيْنَ اسْتَكْبَرُوْٓا اِنَّا بِالَّذِيْٓ اٰمَنْتُمْ بِهٖ كٰفِرُوْنَ ۝

७७. ती अहङ्कारी व्यक्तिहरूले भने, निश्चय नै हामी त्यसप्रति अविश्वास गर्छौं जसप्रति तिमीहरू विश्वास गर्छौं ।"

فَعَقَرُوا النَّاقَةَ وَ عَتَوْا عَنْ اَمْرِ رَبِّهِمْ وَقَالُوْا يٰصٰلِحُ ائْتِنَا بِمَا تَعِدُنَآ اِنْ كُنْتَ مِنَ الْمُرْسَلِيْنَ ۝

७८. तब तिनीहरूले त्यस पोथी उँटका घुँडा भाँचेर आफ्ना अल्लाहविरुद्ध विद्रोह गरे तथा भने, "ऐ सालिह् यदि तिमी (साँच्चैनै) सन्देशवाहकहरूमध्ये एक हौ भने जुन कुराबाट तिमी हामीलाई डराउँछौ त्यसलाई हाम्रासमक्ष प्रस्तुत गर ।

فَاَخَذَتْهُمُ الرَّجْفَةُ فَاَصْبَحُوْا فِيْ دَارِهِمْ جٰثِمِيْنَ ۝

७९. तब भूकम्पले तिनीहरूलाई अठ्यायो फलस्वरूप तिनीहरू मुर्दामा परिणत भई आफ्ना घरमा जोतिन पुगे ।

فَتَوَلّٰى عَنْهُمْ وَ قَالَ يٰقَوْمِ لَقَدْ اَبْلَغْتُكُمْ رِسَالَةَ رَبِّيْ وَ نَصَحْتُ لَكُمْ وَلٰكِنْ لَّا تُحِبُّوْنَ النّٰصِحِيْنَ ۝

८०. त्यसपछि (सालिह्) तिनीहरूबाट अलग भए र भने, "हे मेरा (जातिका) मानिसहरू हो ! मैले आफ्ना अल्लाहको सन्देश तिमीहरूसमक्ष पुऱ्याई दिएको थिएँ तथा तिमीहरूलाई सत्य उपदेश दिएको थिएँ, परन्तु तिमीहरू शुभचिन्तक उपदेशकहरूलाई मन पराउँदैनौ ।"

وَلُوْطًا اِذْ قَالَ لِقَوْمِهٖٓ اَتَاْتُوْنَ الْفَاحِشَةَ مَا سَبَقَكُمْ بِهَا مِنْ اَحَدٍ مِّنَ الْعٰلَمِيْنَ ۝

८१. तथा (हामीले) लूत्लाई (पठायौं)– जब उनले आफ्नो जातिका मानिसहरूलाई भने, "के तिमीहरू यस्तो घृणित कार्यमा लिप्त हुन्छौ, जुन (कार्य) तिमीहरूभन्दा अघि संसारमा कसैले गरेको थिएन?

اِنَّكُمْ لَتَاْتُوْنَ الرِّجَالَ شَهْوَةً مِّنْ دُوْنِ النِّسَآءِ ؕ بَلْ اَنْتُمْ قَوْمٌ مُّسْرِفُوْنَ ۝

८२. "तिमीहरू महिलाहरूका स्थानमा पुरुषहरूसमक्ष सम्भोग इच्छाका साथ जान्छौ । -यति मात्र) होइन, तिमीहरू त (सबै प्रकारका) सीमाहरू अतिकमण गर्ने व्यक्तिहरूमध्ये हौ ।"

وَمَا كَانَ جَوَابَ قَوْمِهٖٓ اِلَّآ اَنْ قَالُوْٓا

८३. तथा उनका जातिका व्यक्तिहरूको

اَخْرِجُوْهُمْ مِّنْ قَرْيَتِكُمْ ۚ اِنَّهُمْ اُنَاسٌ يَّتَطَهَّرُوْنَ ﴿٨٢﴾

उत्तर केवल यसो भन्नु थियो "तिनीहरूलाई आफ्ना नगरबाट बाहिर निकाल, किनभने यिनीहरू यस्ता व्यक्तिहरू हुन् जसले आफूलाई पवित्र ठान्छन् ।"

فَاَنْجَيْنٰهُ وَاَهْلَهٗۤ اِلَّا امْرَاَتَهٗ ۖ كَانَتْ مِنَ الْغٰبِرِيْنَ ﴿٨٣﴾

८४. तथा हामीले उनकी पत्नीबाहेक उनलाई र उनका परिवारलाई रक्षा गऱ्यौं : तिनीपछि बस्ने व्यक्तिहरूमध्ये (सामेल) थिइन् ।

وَاَمْطَرْنَا عَلَيْهِمْ مَّطَرًا ۖ فَانْظُرْ كَيْفَ كَانَ عَاقِبَةُ الْمُجْرِمِيْنَ ﴿٨٤﴾

८५. तथा हामीले तिनीहरूमाथि वर्षा बर्सायौं । अब हेर, पापी व्यक्तिहरूको अन्त्य कस्तो रहेको थियो ।

وَاِلٰى مَدْيَنَ اَخَاهُمْ شُعَيْبًا ۗ قَالَ يٰقَوْمِ اعْبُدُوا اللّٰهَ مَا لَكُمْ مِّنْ اِلٰهٍ غَيْرُهٗ ۗ قَدْ جَآءَتْكُمْ بَيِّنَةٌ مِّنْ رَّبِّكُمْ فَاَوْفُوا الْكَيْلَ وَالْمِيْزَانَ وَلَا تَبْخَسُوا النَّاسَ اَشْيَآءَهُمْ وَلَا تُفْسِدُوْا فِى الْاَرْضِ بَعْدَ اِصْلَاحِهَا ۗ ذٰلِكُمْ خَيْرٌ لَّكُمْ اِنْ كُنْتُمْ مُّؤْمِنِيْنَ ﴿٨٥﴾

८६. तथा (हामीले) मद्यनतर्फ तिनीहरूका भाई शुयेबलाई (पठायौं) । उनले भने, "हे मेरा (जातिका) मानिसहरू हो ! अल्लाहको उपासना गर; उनीबाहेक तिमीहरूको अन्य कोही उपास्य छैन । तिमीहरूसमक्ष तिमीहरूका अल्लाहका तर्फबाट एउटा स्पष्ट चिह्न आइसकेको छ । अत: नाप र तौल पूर्णगरी दिने गर, तथा मानिसहरूलाई तिनीहरूको प्राप्य वस्तुभन्दा कम गरेर दिने नगर, तथा पृथ्वीमा शान्ति सुव्यवस्था स्थापित गरेपछि अशान्ति उत्पन्न नगर । यदि तिमीहरू विश्वासी हौं भने यही तिमीहरूका निम्ति अति उचित रहनेछ ।

وَلَا تَقْعُدُوْا بِكُلِّ صِرَاطٍ تُوْعِدُوْنَ وَتَصُدُّوْنَ عَنْ سَبِيْلِ اللّٰهِ مَنْ اٰمَنَ بِهٖ وَتَبْغُوْنَهَا عِوَجًا ۚ وَاذْكُرُوْۤا اِذْ كُنْتُمْ قَلِيْلًا فَكَثَّرَكُمْ ۖ وَانْظُرُوْا كَيْفَ كَانَ عَاقِبَةُ الْمُفْسِدِيْنَ ﴿٨٦﴾

८७. "तथा अल्लाहका मार्गबाट ती उनीप्रति विश्वास स्थापना गर्ने व्यक्तिहरूलाई डराउनका निम्ति तथा विमुख गर्नका निम्ति तथा त्यस मार्गलाई टेढोमेढो बनाउनका निम्ति हरेक मार्गमा बस्ने नगर । तथा स्मरण गर जब तिमीहरू अल्पसंख्यामा थियौ तथा उनले तिमीहरूलाई वृद्धि गरेका थिए । तथा जुन व्यक्तिहरूले अशान्ति सृष्टि गर्ने गर्थे

तिनीहरूको अन्त्य कस्तो रहेको थियो भन्ने कुरालाई दृष्टिगत गर ।

وَاِنْ كَانَ طَآئِفَةٌ مِّنْكُمْ اٰمَنُوْا بِالَّذِيْٓ اُرْسِلْتُ بِهٖ وَ طَآئِفَةٌ لَّمْ يُؤْمِنُوْا فَاصْبِرُوْا حَتّٰى يَحْكُمَ اللّٰهُ بَيْنَنَا ۚ وَهُوَ خَيْرُ الْحٰكِمِيْنَ ﴿٨٧﴾

८८. "तथा जुन कुराका साथ मलाई पठाइएको छ त्यसप्रति यदि तिमीहरूमध्ये एउटा समूहले विश्वास गर्छ, तथा अर्को समूहले विश्वास गर्दैन भने अल्लाहले हामीबीच इन्साफ नगरुञ्जेलसम्म धैर्य धारण गर । तथा उनी निर्णायकहरूमध्ये सर्वोत्तम (निर्णायक) रहेका छन् ।"

قَالَ الْمَلَاُ الَّذِيْنَ اسْتَكْبَرُوْا مِنْ قَوْمِهٖ لَنُخْرِجَنَّكَ يٰشُعَيْبُ وَالَّذِيْنَ اٰمَنُوْا مَعَكَ مِنْ قَرْيَتِنَآ اَوْ لَتَعُوْدُنَّ فِيْ مِلَّتِنَا ۚ قَالَ اَوَلَوْ كُنَّا كٰرِهِيْنَ ﴿٨٨﴾

८९. उनका जातिका अहङ्कारी मुखियाहरूले भने, "हे शुयेब ! हामी तिमीलाई तथा विश्वास गर्ने तिम्रा साथका व्यक्तिहरूलाई अवश्य हाम्रा नगरबाट बाहिर निकाल्ने छौं, अथवा तिमीहरूले हाम्रा धर्मतर्फ फर्कनु पर्नेछ ।" उनले भने, "के हाम्रो इच्छा नरहे तापनि?"

قَدِ افْتَرَيْنَا عَلَى اللّٰهِ كَذِبًا اِنْ عُدْنَا فِيْ مِلَّتِكُمْ بَعْدَ اِذْ نَجّٰىنَا اللّٰهُ مِنْهَا ۚ وَمَا يَكُوْنُ لَنَآ اَنْ نَّعُوْدَ فِيْهَآ اِلَّآ اَنْ يَّشَآءَ اللّٰهُ رَبُّنَا ۚ وَسِعَ رَبُّنَا كُلَّ شَيْءٍ عِلْمًا ۚ عَلَى اللّٰهِ تَوَكَّلْنَا ۚ رَبَّنَا افْتَحْ بَيْنَنَا وَبَيْنَ قَوْمِنَا بِالْحَقِّ وَاَنْتَ خَيْرُ الْفٰتِحِيْنَ ﴿٨٩﴾

९०. अल्लाहले हामीलाई त्यसबाट उद्धार गरिसकेपछि यदि (अब) पुनः हामी तिमीहरूको धर्मतर्फ फर्क्यौं भने, हामी निश्चय नै अल्लाहप्रति मिथ्या आरोप लगाइरहेथ्यौं । हाम्रा अल्लाह अल्लाहको इच्छाबिना हाम्रा निम्ति त्यसतर्फ फर्कनु सम्भव छैन । सम्पूर्ण वस्तुहरू हाम्रा अल्लाहका ज्ञानअन्तर्गत रहेका छन् । अल्लाहप्रति नै हाम्रो पूर्ण भरोसा रहेको छ । (अतः) हे हाम्रा अल्लाह, हामी र हाम्रा जातिका -मानिसहरू) बीच सत्यका साथ निर्णय गर, तथा तिमी नै निर्णायकहरूमध्ये सर्वोत्तम (निर्णायक) हौ ।"

وَقَالَ الْمَلَاُ الَّذِيْنَ كَفَرُوْا مِنْ قَوْمِهٖ لَئِنِ اتَّبَعْتُمْ شُعَيْبًا اِنَّكُمْ اِذًا لَّخٰسِرُوْنَ ﴿٩٠﴾

९१. तथा उनका जातिका मानिसहरूमध्ये ती मुखियाहरू जसले अविश्वास गरेका थिए, भने, "यदि तिमीहरूले शुयेबको अनुसरण गर्‍यौ भने तिमीहरू अवश्य नै

घाटाग्रस्त व्यक्तिहरूमध्ये हुनेछौ ।"

فَاَخَذَتْهُمُ الرَّجْفَةُ فَاَصْبَحُوْا فِيْ دَارِهِمْ جٰثِمِيْنَ ﴿٩٢﴾

९२. अतः तिनीहरूलाई भूकम्पले अठ्यायो तथा तिनीहरू आफ्ना घरका भुईंमा घोटिप्न पुगे ।

اَلَّذِيْنَ كَذَّبُوْا شُعَيْبًا كَاَنْ لَّمْ يَغْنَوْا فِيْهَا ۚ اَلَّذِيْنَ كَذَّبُوْا شُعَيْبًا كَانُوْا هُمُ الْخٰسِرِيْنَ ﴿٩٣﴾

९३. जसले शुयेबलाई मिथ्यावादी ठहऱ्याएका थिए ती व्यक्तिहरू यस्ता हुन पुगे मानौं तिनीहरू त्यहाँ कहिल्यै रहेका थिएनन् । ती व्यक्तिहरू जसले शुयेबलाई मिथ्यावादी ठहऱ्याएका थिए– तिनीहरू नै थिए जसले घाटा उठाएका थिए ।

فَتَوَلّٰى عَنْهُمْ وَقَالَ يٰقَوْمِ لَقَدْ اَبْلَغْتُكُمْ رِسٰلٰتِ رَبِّيْ وَنَصَحْتُ لَكُمْ ۚ فَكَيْفَ اٰسٰى عَلٰى قَوْمٍ كٰفِرِيْنَ ﴿٩٤﴾

९४. तब उनी तिनीहरूबाट अलग भए र भने, "हे मेरा जातिका मानिसहरू हो, वास्तवमा मैले आफ्ना अल्लाहका सन्देशहरू तिमीहरूसम्म पुऱ्याएको थिएँ तथा तिमीहरूलाई शुभेच्छापूर्ण उपदेश दिएको थिएँ । अतः अविश्वासी व्यक्तिहरूका निम्ति कसरी म दुःख प्रकट गरुँ ?"

وَمَاۤ اَرْسَلْنَا فِيْ قَرْيَةٍ مِّنْ نَّبِيٍّ اِلَّاۤ اَخَذْنَاۤ اَهْلَهَا بِالْبَاْسَاۤءِ وَالضَّرَّاۤءِ لَعَلَّهُمْ يَضَّرَّعُوْنَ ﴿٩٥﴾

९५. तथा कुनै नगरतर्फ हामीले यस्तो नबी (सिद्ध) कदापि पठाएका छैनौं परन्तु जहाँका मानिसहरूलाई हामीले दरिद्रता र सङ्कटग्रस्त पाऱ्यौं, ताकि तिनीहरू विनम्र बनुन् ।

ثُمَّ بَدَّلْنَا مَكَانَ السَّيِّئَةِ الْحَسَنَةَ حَتّٰى عَفَوْا وَّقَالُوْا قَدْ مَسَّ اٰبَاۤءَنَا الضَّرَّاۤءُ وَالسَّرَّاۤءُ فَاَخَذْنٰهُمْ بَغْتَةً وَّهُمْ لَا يَشْعُرُوْنَ ﴿٩٦﴾

९६. त्यसपछि हामीले (तिनीहरूको) निकृष्ट (अवस्था)लाई उत्तम (अवस्था)मा परिवर्तन गऱ्यौं अतः जब तिनीहरू (धन-दौलत) सम्पन्न (र बहुसङ्ख्यक) हुन पुगे तब भन्न लागे, "सङ्कट र सुख त हाम्रा पितृहरूप्रति (पनि) आइलागेको थियो ।" त्यसपश्चात् हामीले तिनीहरूलाई अकस्मात पक्ड्यौं जसबारे तिनीहरू अनभिज्ञ थिए ।

وَلَوْ اَنَّ اَهْلَ الْقُرٰٓى اٰمَنُوْا وَاتَّقَوْا لَفَتَحْنَا عَلَيْهِمْ بَرَكٰتٍ مِّنَ السَّمَآءِ وَالْاَرْضِ وَلٰكِنْ كَذَّبُوْا فَاَخَذْنٰهُمْ بِمَا كَانُوْا يَكْسِبُوْنَ ﴿٩٧﴾

९७. तथा यदि (ती) नगरहरूका मानिसहरूले विश्वास स्थापना गरेका भए र अल्लाहसित डराउँथे भने, हामी निश्चय तिनीहरूका निम्ति स्वर्ग र पृथ्वीबाट मङ्गलहरू खोल्नेथियौं; परन्तु तिनीहरूले अविश्वास गरे, अत: तिनीहरूका कमाइका कारण नै हामीले तिनीहरूलाई पक्डयौं ।

اَفَاَمِنَ اَهْلُ الْقُرٰٓى اَنْ يَّاْتِيَهُمْ بَاْسُنَا بَيَاتًا وَّهُمْ نَآئِمُوْنَ ﴿٩٨﴾

९८. के (ती) नगरका मानिसहरू त्यसो भए हाम्रो रात्रि समयमा तिनीहरू निद्रामा रहेको अवस्थामा तिनीहरूमाथि आउने दण्डबाट सुरक्षित रहेका छन् त?

اَوَاَمِنَ اَهْلُ الْقُرٰٓى اَنْ يَّاْتِيَهُمْ بَاْسُنَا ضُحًى وَّهُمْ يَلْعَبُوْنَ ﴿٩٩﴾

९९. तथा के (ती) नगरका मानिसहरू हाम्रो त्यस मध्यान्हको प्रारम्भमा तिनीहरू खेलमग्न रहेको अवस्थामा तिनीहरूमाथि आउने दण्डबाट सुरक्षित रहेका छन् त?

اَفَاَمِنُوْا مَكْرَ اللّٰهِ ۚ فَلَا يَاْمَنُ مَكْرَ اللّٰهِ اِلَّا الْقَوْمُ الْخٰسِرُوْنَ ﴿١٠٠﴾

१००. त्यसो भए के तिनीहरू अल्लाहको योजनाबाट सुरक्षित रहेका छन् त? तथा नाशोन्मुख व्यक्तिहरूबाहेक अन्य कसैले अल्लाहको योजनाबाट आफू सुरक्षित रहेको ठान्दैन ।

اَوَلَمْ يَهْدِ لِلَّذِيْنَ يَرِثُوْنَ الْاَرْضَ مِنْۢ بَعْدِ اَهْلِهَآ اَنْ لَّوْ نَشَآءُ اَصَبْنٰهُمْ بِذُنُوْبِهِمْ ۚ وَنَطْبَعُ عَلٰى قُلُوْبِهِمْ فَهُمْ لَا يَسْمَعُوْنَ ﴿١٠١﴾

१०१. जुन व्यक्तिहरू धर्तीमा त्यहाँका (पूर्व) निवासीहरूका उत्तराधिकारी बनेका छन् तिनीहरूलाई यदि हामीले चाहेमा तिनीहरूका पापका कारण दण्ड दिन सक्छौं तथा तिनीहरूले सुन्न नसकून् भनी तिनीहरूका हृदयमा मोहोर ठोक्न सक्छौं भन्ने कुराले के तिनीहरूलाई मार्ग दर्शन गर्न सकेन ?

تِلْكَ الْقُرٰى نَقُصُّ عَلَيْكَ مِنْ اَنْۢبَآئِهَا ۚ وَلَقَدْ جَآءَتْهُمْ رُسُلُهُمْ بِالْبَيِّنٰتِ ۚ فَمَا كَانُوْا لِيُؤْمِنُوْا بِمَا كَذَّبُوْا مِنْ قَبْلُ ۚ كَذٰلِكَ يَطْبَعُ اللّٰهُ عَلٰى قُلُوْبِ الْكٰفِرِيْنَ ﴿١٠٢﴾

१०२. यी यस्ता नगरहरू थिए जसमध्ये केहीको अवस्थाबारे हामीले तिमीसमक्ष वर्णन गरेका छौं । तथा तिनीहरूसमक्ष तिनीहरूका सन्देशवाहकहरू नि:सन्देह स्पष्ट चिह्नहरूका साथ आएका थिए ।

परन्तु जसको तिनीहरूले पहिला इन्कार गरिसकेका थिए त्यसप्रति तिनीहरूले विश्वास स्थापना गरेनन् । यसै प्रकार अल्लाहले अविश्वासीहरूका हृदयलाई सीलबन्दी गर्ने गर्छन् ।

وَمَا وَجَدْنَا لِأَكْثَرِهِم مِّنْ عَهْدٍ ۖ وَإِن وَجَدْنَا أَكْثَرَهُمْ لَفَاسِقِينَ ﴿١٠٢﴾

१०३. तथा तिनीहरूमध्ये अधिकतर व्यक्तिहरूमा हामीले प्रतिज्ञा (पालन) प्रति कुनै चासो रहेको हामीले पाएनौं तथा तिनीहरूमध्ये अधिकतर व्यक्तिहरूलाई हामीले निश्चय नै दुष्कर्ममा लिप्त पायौं ।

ثُمَّ بَعَثْنَا مِن بَعْدِهِم مُّوسَىٰ بِآيَاتِنَا إِلَىٰ فِرْعَوْنَ وَمَلَئِهِ فَظَلَمُوا بِهَا ۖ فَانظُرْ كَيْفَ كَانَ عَاقِبَةُ الْمُفْسِدِينَ ﴿١٠٣﴾

१०४. अत: तिनीहरूपश्चात् हामीले मूसालाई आफ्ना चिह्नहरूका साथ फिरौन र उसका मुखियाहरू कहाँ पठायौं, परन्तु तिनीहरूले अन्यायपूर्वक उनीहरूलाई (अस्वीकार गरे) । अत: हेर, अशान्ति सिर्जना गर्ने व्यक्तिहरूको अन्त्य कस्तो भयो ।

وَقَالَ مُوسَىٰ يَا فِرْعَوْنُ إِنِّي رَسُولٌ مِّن رَّبِّ الْعَالَمِينَ ﴿١٠٤﴾

१०५. तथा मूसाले भने, "हे फिरौन, (साँच्चै नै) म सम्पूर्ण विश्वब्रह्माण्डका पालनहारका तर्फबाट एकजना सन्देशवाहक हुँ ।

حَقِيقٌ عَلَىٰ أَن لَّا أَقُولَ عَلَى اللَّهِ إِلَّا الْحَقَّ ۚ قَدْ جِئْتُكُم بِبَيِّنَةٍ مِّن رَّبِّكُمْ فَأَرْسِلْ مَعِيَ بَنِي إِسْرَائِيلَ ﴿١٠٥﴾

१०६. "अल्लाहका सम्बन्धमा सत्य छाडी अन्य कुरा गर्नु मेरा निम्ति उचित ठहर्ने छैन । म तिमीहरूसमक्ष तिमीहरूका अल्लाहका तर्फबाट एउटा स्पष्ट चिह्नका साथ आएको छु; त्यसकारण, इजरायलका सन्तानलाई मसँग जान देउ ।"

قَالَ إِن كُنتَ جِئْتَ بِآيَةٍ فَأْتِ بِهَا إِن كُنتَ مِنَ الصَّادِقِينَ ﴿١٠٦﴾

१०७. (फिरौनले) भन्यो, "यदि तिमी वास्तवमै चिह्नका साथ आएका हौं भने (र) यदि तिमी साँचा हौ भने त्यसलाई प्रस्तुत गर ।"

فَأَلْقَىٰ عَصَاهُ فَإِذَا هِيَ ثُعْبَانٌ مُّبِينٌ ﴿١٠٧﴾

१०८. तब उनले आफ्नो लौरो तल फ्याँके, अत: हेर ! त्यो स्पष्टत: एउटा सर्पको

रूपमा देखिन पुग्यो ।

وَّ نَزَعَ يَدَهٗ فَاِذَا هِيَ بَيْضَآءُ لِلنّٰظِرِيْنَ ﴿١٠٩﴾

१०९. तथा उनले आफ्नो हात बाहिर निकाले, तथा हेर ! दर्शकहरूका नजरमा त्यो सेतो देखियो ।

قَالَ الْمَلَاُ مِنْ قَوْمِ فِرْعَوْنَ اِنَّ هٰذَا لَسٰحِرٌ عَلِيْمٌ ﴿١١٠﴾

११०. फिरौनको जातिका मुखियाहरूले भने, "यो अवश्य नै कोही पारङ्गत जादुगर हो ।

يُّرِيْدُ اَنْ يُّخْرِجَكُمْ مِّنْ اَرْضِكُمْ فَمَاذَا تَاْمُرُوْنَ ﴿١١١﴾

१११. "यसले तिमीहरूलाई आफ्ना देशबाट निकाल्न चाहन्छ । अब तिमीहरू के परामर्श दिन्छौं?

قَالُوْٓا اَرْجِهْ وَ اَخَاهُ وَ اَرْسِلْ فِي الْمَدَآئِنِ حٰشِرِيْنَ ﴿١١٢﴾

११२. तिनीहरूले भने, "त्यसलाई र त्यसका भाईलाई (केही समयसम्म) छाडी देऊ,तथा नगरहरूतर्फ सूचनावाहकहरूलाई पठाऊ,

يَاْتُوْكَ بِكُلِّ سٰحِرٍ عَلِيْمٍ ﴿١١٣﴾

११३. "जसले तिमीसमक्ष हर पारङ्गत जादुगरलाई यहाँ ल्याऊन् ।"

وَ جَآءَ السَّحَرَةُ فِرْعَوْنَ قَالُوْٓا اِنَّ لَنَا لَاَجْرًا اِنْ كُنَّا نَحْنُ الْغٰلِبِيْنَ ﴿١١٤﴾

११४. तथा फिरौनसमक्ष जादुगरहरू आएर भने: "यदि हामी विजयी भयौं भने अवश्य हामीलाई पुरस्कार प्राप्त हुनेछ ।"

قَالَ نَعَمْ وَاِنَّكُمْ لَمِنَ الْمُقَرَّبِيْنَ ﴿١١٥﴾

११५. उसले भन्यो, "हो, तथा तिमीहरू (मेरा) सान्निध्यप्राप्त व्यक्तिहरूमध्ये (पनि) हुनेछौं ।"

قَالُوْا يٰمُوْسٰٓى اِمَّآ اَنْ تُلْقِيَ وَاِمَّآ اَنْ نَّكُوْنَ نَحْنُ الْمُلْقِيْنَ ﴿١١٦﴾

११६. तिनीहरूले भने, "ए मूसा, या त तिमी (पहिला) फ्याँक, अथवा हामी (पहिला) व्यक्तिहरू बनौं ।

قَالَ اَلْقُوْا فَلَمَّآ اَلْقَوْا سَحَرُوْٓا اَعْيُنَ النَّاسِ وَاسْتَرْهَبُوْهُمْ وَجَآءُوْ بِسِحْرٍ عَظِيْمٍ ﴿١١٧﴾

११७. उनले उत्तर दिए, "तिमीहरू फ्याँक ।" तथा जब तिनीहरूले फ्याँके, तिनीहरूले मानिसहरूका नेत्रहरूलाई मन्त्रमुग्ध पारे, तथा तिनीहरूलाई भयभीत तुल्याए तथा

तिनीहरूले एउटा भयानक जादू ल्याए ।

وَاَوْحَيْنَآ اِلٰى مُوْسٰٓى اَنْ اَلْقِ عَصَاكَ ۚ فَاِذَا هِيَ تَلْقَفُ مَا يَاْفِكُوْنَ ﴿١١٧﴾

११८. तथा हामीले मूसालाई (के भनी) आकाशवाणी गऱ्यौं (भने), "तिमी आफ्नो लौरो फ्याँक," तथा हेर ! त्यसले तिनीहरूको जालसाजीलाई निलेरै छाड्यो ।

فَوَقَعَ الْحَقُّ وَبَطَلَ مَا كَانُوْا يَعْمَلُوْنَ ﴿١١٨﴾

११९. अतः सत्य त्यसरी स्थापना भयो, तथा तिनीहरूका कार्यहरू असत्य प्रमाणित भए ।

فَغُلِبُوْا هُنَالِكَ وَانْقَلَبُوْا صٰغِرِيْنَ ﴿١١٩﴾

१२०. तब तिनीहरू त्यहाँ पराजित भए, तथा अपमानित भएर फर्के ।

وَاُلْقِيَ السَّحَرَةُ سٰجِدِيْنَ ﴿١٢٠﴾

१२१. तथा ती जादुगरहरू लम्पसार परेर दण्डवत गर्न बाध्य भए ।

قَالُوْٓا اٰمَنَّا بِرَبِّ الْعٰلَمِيْنَ ﴿١٢١﴾

१२२. (तथा) तिनीहरूले भने, "हामी विश्वब्रह्माण्डका अल्लाहप्रति विश्वास गर्छौं

رَبِّ مُوْسٰى وَهٰرُوْنَ ﴿١٢٢﴾

१२३. "मूसा र हारुनका अल्लाह (प्रति) ।"

قَالَ فِرْعَوْنُ اٰمَنْتُمْ بِهٖ قَبْلَ اَنْ اٰذَنَ لَكُمْ ۚ اِنَّ هٰذَا لَمَكْرٌ مَّكَرْتُمُوْهُ فِى الْمَدِيْنَةِ لِتُخْرِجُوْا مِنْهَآ اَهْلَهَا ۚ فَسَوْفَ تَعْلَمُوْنَ ﴿١٢٣﴾

१२४. फिरौनले भन्यो, "मैले अनुमति दिनुअघि नै तिमीहरूले त्यसप्रति विश्वास गऱ्यौ । निश्चय नै, यो एउटा यस्तो षडयन्त्र हो जुन तिमीहरूले यस नगरमा, यहाँका बासिन्दाहरूलाई निकाल्नका निम्ति रचेका हौं, परन्तु तिमीहरूले शीघ्र नै (परिणाम) जान्नेछौ ।

لَاُقَطِّعَنَّ اَيْدِيَكُمْ وَاَرْجُلَكُمْ مِّنْ خِلَافٍ ثُمَّ لَاُصَلِّبَنَّكُمْ اَجْمَعِيْنَ ﴿١٢٤﴾

१२५. "म निश्चय नै तिमीहरूका हात र खुट्टाहरू विपरीत दिशाबाट काट्नेछु । पुनः म तिमीहरू सबैलाई निश्चय नै शूलीमा चढाउनेछु ।

قَالُوْٓا اِنَّآ اِلٰى رَبِّنَا مُنْقَلِبُوْنَ ﴿١٢٥﴾

१२६. तिनीहरूले उत्तर दिए, "तब ता हामी आफ्नै अल्लाहतर्फ फर्कनेछौं ।

وَمَا تَنْقِمُ مِنَّآ إِلَّآ أَنْ اٰمَنَّا بِاٰيٰتِ رَبِّنَا لَمَّا جَآءَتْنَا ؕ رَبَّنَآ أَفْرِغْ عَلَيْنَا صَبْرًا وَّتَوَفَّنَا مُسْلِمِيْنَ ﴿١٢٧﴾

१२७. तिमी केवल हामीसमक्ष आएका आफ्ना अल्लाहका चिह्नहरूप्रति हामीले विश्वास गरेकै कारण हामीमाथि क्रोधित भएका हौ । हे हाम्रा अल्लाह, हामीप्रति धैर्य अवतीर्ण गर तथा (तिमीप्रति) समर्पित रहेका अवस्थामा हामीलाई मृत्यु प्रदान गर ।"

وَقَالَ الْمَلَاُ مِنْ قَوْمِ فِرْعَوْنَ اَتَذَرُ مُوْسٰى وَقَوْمَهٗ لِيُفْسِدُوْا فِى الْاَرْضِ وَيَذَرَكَ وَاٰلِهَتَكَ ؕ قَالَ سَنُقَتِّلُ اَبْنَآءَهُمْ وَنَسْتَحْيٖ نِسَآءَهُمْ ۚ وَاِنَّا فَوْقَهُمْ قٰهِرُوْنَ ﴿١٢٨﴾

१२८. तथा फिरौनका जातिका मुखियाहरूले भने, "के तिमी मूसा र उसका मानिसहरूलाई देशमा अशान्ति फैलाउन र तिमीलाई तथा तिम्रा उपास्यहरूलाई त्यागनका निम्ति छोड्छौ?" उसले उत्तर दियो, "हामी अवश्य तिनीहरूका पुत्रहरूलाई निर्ममताका साथ हत्या गर्नेछौं तथा तिनीहरूका महिलाहरूलाई जीवित रहन छाडिदिनेछौं । तथा निःसन्देह हामी तिनीहरूमाथि विजयी रहेका छौं ।

قَالَ مُوْسٰى لِقَوْمِهِ اسْتَعِيْنُوْا بِاللّٰهِ وَاصْبِرُوْا ۚ اِنَّ الْاَرْضَ لِلّٰهِ ۙ يُوْرِثُهَا مَنْ يَّشَآءُ مِنْ عِبَادِهٖ ؕ وَالْعَاقِبَةُ لِلْمُتَّقِيْنَ ﴿١٢٩﴾

१२९. मूसाले आफ्ना (जातिका) मानिसहरूलाई भने, "अल्लाहसँग सहायता माग र धैर्यधारण गर । वास्तवमा, धर्ती त अल्लाहकै हो; उनले आफ्ना भक्तहरूमध्ये जसलाई चाहन्छन् त्यो उत्तराधिकारस्वरूप प्रदान गर्छन्। तथा परिणाम भने अल्लाहप्रति डराउने व्यक्तिहरूको रहेको छ ।

قَالُوْٓا اُوْذِيْنَا مِنْ قَبْلِ اَنْ تَاْتِيَنَا وَمِنْۢ بَعْدِ مَا جِئْتَنَا ؕ قَالَ عَسٰى رَبُّكُمْ اَنْ يُّهْلِكَ عَدُوَّكُمْ وَيَسْتَخْلِفَكُمْ فِى الْاَرْضِ فَيَنْظُرَ كَيْفَ تَعْمَلُوْنَ ﴿١٣٠﴾

१३०. तिनीहरूले उत्तर दिए, "हामीसमक्ष तिम्रो आगमन हुनुअघि पनि हामीलाई सताइएको थियो तथा तिम्रो आगमनपश्चात् (पनि)" । उनले भने, "सम्भव छ तिमीहरूका अल्लाहले तिमीहरूका शत्रुलाई विनष्ट गरुन् र तिमीहरूलाई देशका शासनकर्ता बनाउन्, (ताकि) त्यसपछि उनले तिमीहरूको कार्यकलाप हेर्न सकुन् ।"

१३१. तथा हामीले फिरौनका मानिसहरूलाई अनाबिष्टि र फलको ह्रासगरी दण्ड दिएका थियौं, ताकि तिनीहरूले अर्ती लिन सकून् ।

وَلَقَدْ أَخَذْنَا آلَ فِرْعَوْنَ بِالسِّنِينَ وَنَقْصٍ مِّنَ الثَّمَرَاتِ لَعَلَّهُمْ يَذَّكَّرُونَ ﴿١٣٠﴾

१३२. परन्तु जब तिनीहरूलाई सुख प्राप्त हुन्थ्यो, तिनीहरू भन्थे "यो हाम्रै निम्ति हो ।" तथा यदि तिनीहरूमाथि सङ्कट आइ लाग्थ्यो त्यो मूसा र उनका साथीहरूको कुलच्छिन (कै कारण) हो भनी तिनीहरू भन्ने गर्थे । अतः निश्चय नै, तिनीहरूको कुलच्छिन(को कारण) अल्लाहका जुनाफमा छ । परन्तु तिनीहरूमध्ये अधिकतरलाई थाहा छैन ।

فَإِذَا جَاءَتْهُمُ الْحَسَنَةُ قَالُوا لَنَا هَٰذِهِ ۖ وَإِن تُصِبْهُمْ سَيِّئَةٌ يَطَّيَّرُوا بِمُوسَىٰ وَمَن مَّعَهُ ۗ أَلَا إِنَّمَا طَائِرُهُمْ عِندَ اللَّهِ وَلَٰكِنَّ أَكْثَرَهُمْ لَا يَعْلَمُونَ ﴿١٣١﴾

१३३. तथा तिनीहरूले भने, "हामीलाई छकाउनका निम्ति जुनसुकै चिह्न लिएर हामीसमक्ष आए पनि, हामी तिमीप्रति विश्वास गर्नेछैनौं ।"

وَقَالُوا مَهْمَا تَأْتِنَا بِهِ مِنْ آيَةٍ لِّتَسْحَرَنَا بِهَا فَمَا نَحْنُ لَكَ بِمُؤْمِنِينَ ﴿١٣٢﴾

१३४. तब हामीले तिनीहरूमाथि आँधी र सलह(को बगाल) तथा जुम्रा र भ्यागुता तथा रक्त प्रेषण गऱ्यौं– स्पष्ट चिह्नहरू, परन्तु तिनीहरूले अहङ्कारपूर्ण व्यवहार गरे तथा तिनीहरू पापी मानिसहरू थिए ।

فَأَرْسَلْنَا عَلَيْهِمُ الطُّوفَانَ وَالْجَرَادَ وَالْقُمَّلَ وَالضَّفَادِعَ وَالدَّمَ آيَاتٍ مُّفَصَّلَاتٍ فَاسْتَكْبَرُوا وَكَانُوا قَوْمًا مُّجْرِمِينَ ﴿١٣٣﴾

१३५. तथा जब तिनीहरूमाथि दण्ड अवतीर्ण भयो, तब तिनीहरूले भने, "हे मूसा, आफ्ना अल्लाहसँग उनले तिमीलाई दिएको वचनअनुसार हाम्रा निम्ति प्रार्थना गर । यदि तिमीले हामीबाट दण्ड निवारण गऱ्यौ भने निश्चय नै हामी तिमीप्रति विश्वास गर्नेछौं तथा हामी अवश्य तिमीसँग इजरायलका सन्तानलाई पठाउनेछौं ।"

وَلَمَّا وَقَعَ عَلَيْهِمُ الرِّجْزُ قَالُوا يَا مُوسَى ادْعُ لَنَا رَبَّكَ بِمَا عَهِدَ عِندَكَ ۖ لَئِن كَشَفْتَ عَنَّا الرِّجْزَ لَنُؤْمِنَنَّ لَكَ وَلَنُرْسِلَنَّ مَعَكَ بَنِي إِسْرَائِيلَ ﴿١٣٤﴾

१३६. परन्तु जब हामीले तिनीहरूबाट त्यो सजाय केही समयका निम्ति जससम्म

فَلَمَّا كَشَفْنَا عَنْهُمُ الرِّجْزَ إِلَىٰ أَجَلٍ هُم بَالِغُوهُ إِذَا هُمْ يَنكُثُونَ ﴿١٣٥﴾

तिनीहरूले पुग्नु थियो, हटायौं, हेर ! तिनीहरूले आफ्नो प्रतिज्ञा भङ्ग गरे ।

१३७. अत: हामीले तिनीहरूसित प्रतिशोध लिँदै तिनीहरूलाई समुद्रमा डुबायौं, कारण तिनीहरू हाम्रा चिह्नहरूप्रति मिथ्यासरह व्यवहार गर्थे तथा तिनीहरूप्रति ध्यान दिँदैनथे ।

فَانْتَقَمْنَا مِنْهُمْ فَاَغْرَقْنٰهُمْ فِي الْيَمِّ بِاَنَّهُمْ كَذَّبُوْا بِاٰيٰتِنَا وَ كَانُوْا عَنْهَا غٰفِلِيْنَ ﴿١٣٦﴾

१३८. तथा हामीले ती व्यक्तिहरू जसलाई दुर्बल ठनिन्थ्यो तिनलाई हामीले मङ्गलमय तुल्याएको त्यस देशको पूर्वभाग र त्यसको पश्चिम भागका उत्तराधिकारी बनायौं । तथा तिम्रा अल्लाहको अनुग्रहपूर्ण वचन इजरायलका सन्तानका निम्ति तिनीहरूको धैर्यधारणाका कारण पूर्ण हुन गयो; तथा हामीले फिरौन र उसका जातिका मानिसहरूले निर्माण गरेका र तिनीहरूले खडा गरेका सबै (निर्माण) कार्यहरू ध्वस्त पारिदियौं ।

وَ اَوْرَثْنَا الْقَوْمَ الَّذِيْنَ كَانُوْا يُسْتَضْعَفُوْنَ مَشَارِقَ الْاَرْضِ وَمَغَارِبَهَا الَّتِيْ بٰرَكْنَا فِيْهَا ؕ وَ تَمَّتْ كَلِمَتُ رَبِّكَ الْحُسْنٰى عَلٰى بَنِيْٓ اِسْرَآءِيْلَ ۙ۬ بِمَا صَبَرُوْا ؕ وَ دَمَّرْنَا مَا كَانَ يَصْنَعُ فِرْعَوْنُ وَ قَوْمُهٗ وَ مَا كَانُوْا يَعْرِشُوْنَ ﴿١٣٧﴾

१३९. तथा हामीले इजरायलका सन्तानलाई समुद्रपार पुऱ्यायौं, तथा तिनीहरू एउटा यस्तो जातिका मानिसहरूसमक्ष आए जुन (मानिसहरू) मूर्तिहरूको उपासना गर्ने गर्थे । तिनीहरूले भने, "हे मूसा, हाम्रा निम्ति एउटा त्यस्तै उपास्य बनाउ जस्ता तिनीहरूका उपास्यहरू रहेका छन् ।" उनले भने, "निश्चय नै, तिमीहरू अज्ञानी मानिसहरू रहेका छौ ।

وَ جٰوَزْنَا بِبَنِيْٓ اِسْرَآءِيْلَ الْبَحْرَ فَاَتَوْا عَلٰى قَوْمٍ يَّعْكُفُوْنَ عَلٰٓى اَصْنَامٍ لَّهُمْ ۚ قَالُوْا يٰمُوْسَى اجْعَلْ لَّنَآ اِلٰهًا كَمَا لَهُمْ اٰلِهَةٌ ؕ قَالَ اِنَّكُمْ قَوْمٌ تَجْهَلُوْنَ ﴿١٣٨﴾

१४०. "तिनीहरूबारे (भन्ने हो भने), जुन जुन (कार्य)मा तिनीहरू व्यस्त रहेका छन् सबै ध्वस्त हुनेछ, तथा तिनीहरूले गरिआएको सबै कार्यहरू व्यर्थ हुनेछ ।"

اِنَّ هٰٓؤُلَآءِ مُتَبَّرٌ مَّا هُمْ فِيْهِ وَ بٰطِلٌ مَّا كَانُوْا يَعْمَلُوْنَ ﴿١٣٩﴾

قَالَ اَغَيْرَ اللّٰهِ اَبْغِيْكُمْ اِلٰهًا وَّ هُوَ فَضَّلَكُمْ عَلَى الْعٰلَمِيْنَ ﴿١٤٠﴾

१४१. उनले भने, "के म अल्लाहबाहेक तिमीहरूका निम्ति कुनै अर्कै उपास्य खोजुँ, जब उनले नै तिमीहरूलाई सम्पूर्ण मानिसहरूका तुलनामा प्राधान्यता प्रदान गरेका छन् (तापनि) ?"

وَ اِذْ اَنْجَيْنٰكُمْ مِّنْ اٰلِ فِرْعَوْنَ يَسُوْمُوْنَكُمْ سُوْٓءَ الْعَذَابِ ۚ يُقَتِّلُوْنَ اَبْنَآءَكُمْ وَ يَسْتَحْيُوْنَ نِسَآءَكُمْ ؕ وَ فِيْ ذٰلِكُمْ بَلَآءٌ مِّنْ رَّبِّكُمْ عَظِيْمٌ ﴿١٤١﴾

१४२. तथा (त्यस समयको स्मरण गर) जब हामीले तिमीहरूलाई फिरौनका मानिसहरूबाट जसले तिमीहरूलाई पीडादायक सजाय दिने गर्थे मुक्त गरेका थियौं । तिनीहरूले तिमीहरूका पुत्रहरूलाई हत्या गर्ने गर्थे र तिमीहरूका महिलाहरूलाई जीवित राख्ने गर्थे । तथा त्यसमा तिमीहरूका अल्लाहका तर्फबाट तिमीहरूका निम्ति एउटा ठूलो परीक्षा थियो

وَ وٰعَدْنَا مُوْسٰى ثَلٰثِيْنَ لَيْلَةً وَّ اَتْمَمْنٰهَا بِعَشْرٍ فَتَمَّ مِيْقَاتُ رَبِّهٖۤ اَرْبَعِيْنَ لَيْلَةً ۚ وَ قَالَ مُوْسٰى لِاَخِيْهِ هٰرُوْنَ اخْلُفْنِيْ فِيْ قَوْمِيْ وَ اَصْلِحْ وَ لَا تَتَّبِعْ سَبِيْلَ الْمُفْسِدِيْنَ ﴿١٤٢﴾

१४३. तथा हामीले मूसासँग तीस रात्रिको भाका राख्यौं र त्यसमा थप दस जोडेर त्यसलाई पूर्ण गऱ्यौं । यसप्रकार उनका अल्लाहद्वारा निर्धारित अवधि पूरा हुन गयो– चालीस रात्रिको । तथा मूसाले आफ्ना भाई हारुनलाई भने, "मेरो अनुपस्थितिमा मेरा मानिसहरूमा मेरो प्रतिनिधित्व गर तथा (तिनीहरूलाई) राम्ररी व्यवस्था गरेर राख, तथा अशान्ति उत्पन गर्ने व्यक्तिहरूको मार्ग अनुसरण नगर ।"

وَ لَمَّا جَآءَ مُوْسٰى لِمِيْقَاتِنَا وَ كَلَّمَهٗ رَبُّهٗ ۙ قَالَ رَبِّ اَرِنِيْۤ اَنْظُرْ اِلَيْكَ ؕ قَالَ لَنْ تَرٰىنِيْ وَ لٰكِنِ انْظُرْ اِلَى الْجَبَلِ فَاِنِ اسْتَقَرَّ مَكَانَهٗ فَسَوْفَ تَرٰىنِيْ ۚ فَلَمَّا تَجَلّٰى رَبُّهٗ لِلْجَبَلِ جَعَلَهٗ دَكًّا وَّ خَرَّ مُوْسٰى صَعِقًا ۚ فَلَمَّاۤ اَفَاقَ قَالَ سُبْحٰنَكَ تُبْتُ اِلَيْكَ وَ اَنَا اَوَّلُ الْمُؤْمِنِيْنَ ﴿١٤٣﴾

१४४. तथा जब मूसा हाम्रो निर्धारित समयमा उपस्थित भए र उनका प्रतिपालकले उनीसँग वार्ता गरे, उनले भने, "हे मेरा अल्लाह मलाई (आफ्नो) दर्शन देउ, ताकि म तिमीलाई देख्न सकुँ ।" उनले उत्तर दिए, "तिमीले मलाई देख्न सक्नेछैनौं, परन्तु पर्वततर्फ हेर; यदि त्यो आफ्नो स्थानमा स्थिर रह्यो भने तिमीले मलाई देख्न सक्नेछौ ।" तथा जब उनका प्रतिपालकले स्वयम्लाई पर्वतमाथि प्रकट गरे, (तब) उनले त्यसलाई टुका टुका पारे तथा मूसा

बेहोस भएर लडे । तथा जब उनी होशमा आए, (तब) उनले भने, "तिमी पवित्र छौ, म तिमीतर्फ नै झुक्छु, तथा म विश्वासीहरूमध्ये सर्वप्रथम रहेको छु ।"

१४५. (अल्लाहले) भने, "हे मूसा, मैले तिमीलाई मेरो सन्देशहरू र मेरो वाणीद्वारा (तिम्रा जमानाका) मानिसहरूमाथि चुनेको छु । त्यसकारण मैले प्रदान गरेका वस्तुहरूलाई दृढतापूर्वक पक्र तथा कृतज्ञ व्यक्तिहरूमध्येको बन ।"

قَالَ يٰمُوْسٰٓى اِنِّى اصْطَفَيْتُكَ عَلَى النَّاسِ
بِرِسٰلٰتِىْ وَبِكَلَامِىْ ۖ فَخُذْ مَآ اٰتَيْتُكَ
وَكُنْ مِّنَ الشّٰكِرِيْنَ ﴿١٤٥﴾

१४६. तथा हामीले उनका निम्ति केही सिलोटहरूमा सम्पूर्ण कुराहरूबारे लेख्यौं– उपदेश र सम्पूर्ण वस्तुहरूको व्याख्या "अतः तिनीहरूलाई दृढताकासाथ पक्र तथा आफ्ना मानिसहरूलाई त्यसबाट उत्तम कुराहरूको अनुसरण गर्न आदेश देउ । शीघ्र नै तिमीहरूलाई म उल्लङ्घनकारीहरूको निवास देखाउनेछु ।

وَكَتَبْنَا لَهٗ فِى الْاَلْوَاحِ مِنْ كُلِّ شَىْءٍ
مَّوْعِظَةً وَّتَفْصِيْلًا لِّكُلِّ شَىْءٍ ۚ فَخُذْهَا
بِقُوَّةٍ وَّاْمُرْ قَوْمَكَ يَاْخُذُوْا
بِاَحْسَنِهَا ۚ سَاُورِيْكُمْ دَارَ الْفٰسِقِيْنَ ﴿١٤٦﴾

१४७. जुन व्यक्तिहरू संसारमा अनाहक अहङ्कारीपूर्ण व्यवहार गर्छन् तिनीहरूलाई म शीघ्र नै आफ्ना चिह्नहरूबाट अलग गर्नेछु ; तथा यदि तिनीहरूले सम्पूर्ण चिह्नहरू देखे, तापनि तिनीहरूप्रति विश्वास गर्नेछैनन्; तथा यदि तिनीहरूले हिदायतको मार्ग देखे भने, तिनीहरूले कदापि त्यसलाई (आफ्नो) मार्गस्वरूप अपनाउनेछैनन्, परन्तु यदि तिनीहरूले गलत मार्ग देखेभने चाहिँ तिनीहरूले त्यसलाई (आफ्नो) मार्गस्वरूप अपनाउने छन् । यसको कारण के हो भने तिनीहरूले हाम्रा चिह्नहरूप्रति मिथ्यासरह व्यवहार गर्थे तथा तिनीहरूप्रति ध्यान दिँदैनथे ।

سَاَصْرِفُ عَنْ اٰيٰتِىَ الَّذِيْنَ يَتَكَبَّرُوْنَ
فِى الْاَرْضِ بِغَيْرِ الْحَقِّ ۗ وَاِنْ يَّرَوْا كُلَّ
اٰيَةٍ لَّا يُؤْمِنُوْا بِهَا ۚ وَاِنْ يَّرَوْا سَبِيْلَ
الرُّشْدِ لَا يَتَّخِذُوْهُ سَبِيْلًا ۚ وَاِنْ يَّرَوْا
سَبِيْلَ الْغَىِّ يَتَّخِذُوْهُ سَبِيْلًا ۗ ذٰلِكَ
بِاَنَّهُمْ كَذَّبُوْا بِاٰيٰتِنَا وَكَانُوْا
عَنْهَا غٰفِلِيْنَ ﴿١٤٧﴾

१४८. तथा ती व्यक्तिहरू जसले हाम्रा चिह्नहरूप्रति तथा परलोकको

وَالَّذِيْنَ كَذَّبُوْا بِاٰيٰتِنَا وَلِقَآءِ

الْاٰخِرَةِ حَبِطَتْ اَعْمَالُهُمْ ؕ هَلْ يُجْزَوْنَ اِلَّا مَا كَانُوْا يَعْمَلُوْنَ ﴿١٤٨﴾

साक्षात्कारप्रति विश्वास गर्दैनन् तिनीहरूका कार्यहरू व्यर्थ हुन गएका छन् । के तिनीहरूले केवल आफ्ना कार्यहरूको प्रतिदानबाहेक (अन्य कुनै वस्तुको आधारमा) पारितोषिकको आशा राख्न सक्छन् ?

وَاتَّخَذَ قَوْمُ مُوْسٰى مِنْۢ بَعْدِهٖ مِنْ حُلِيِّهِمْ عِجْلًا جَسَدًا لَّهٗ خُوَارٌ ؕ اَلَمْ يَرَوْا اَنَّهٗ لَا يُكَلِّمُهُمْ وَلَا يَهْدِيْهِمْ سَبِيْلًا ۘ اِتَّخَذُوْهُ وَكَانُوْا ظٰلِمِيْنَ ﴿١٤٩﴾

१४९. तथा मूसाका (जातिका) मानिसहरूले उनको अनुपस्थितिमा आफ्ना गरगहनाहरूबाट एउटा बाच्छो बनाए,– एउटा मलिनु आवाज उत्पन्न गर्ने (तथा) एउटा (जीवनहीन) शरीर निस्कन्थ्यो । के त्यसले तिनीहरूसँग न वार्ता गर्थ्यो न त तिनीहरूलाई कुनै मार्ग देखाउँथ्यो भन्ने कुरा तिनीहरूले देखेनन्? तिनीहरूले त्यसलाई (उपासनाका निम्ति) लिए, त्यसरी तिनीहरू उल्लङ्घनकारी हुनपुगे ।

وَلَمَّا سُقِطَ فِيْۤ اَيْدِيْهِمْ وَرَاَوْا اَنَّهُمْ قَدْ ضَلُّوْا ۙ قَالُوْا لَئِنْ لَّمْ يَرْحَمْنَا رَبُّنَا وَيَغْفِرْ لَنَا لَنَكُوْنَنَّ مِنَ الْخٰسِرِيْنَ ﴿١٥٠﴾

१५०. तथा जब तिनीहरू लज्जित हुन पुगे र तिनीहरू निश्चितरूपमा पथभ्रष्ट भएका थिए भन्ने कुरा बुझे, (तब) तिनीहरूले भने, "यदि हाम्रा अल्लाहले हामीमाथि करुणा गरेनन् र हामीलाई क्षमादान गरेनन् भने, हामी निश्चय नै घाटाग्रस्त व्यक्तिहरूमध्येका हुनपुग्नेछौं ।"

وَلَمَّا رَجَعَ مُوْسٰۤى اِلٰى قَوْمِهٖ غَضْبَانَ اَسِفًا ۙ قَالَ بِئْسَمَا خَلَفْتُمُوْنِيْ مِنْۢ بَعْدِيْ ۚ اَعَجِلْتُمْ اَمْرَ رَبِّكُمْ ۚ وَاَلْقَى الْاَلْوَاحَ وَاَخَذَ بِرَاْسِ اَخِيْهِ يَجُرُّهٗۤ اِلَيْهِ ؕ قَالَ ابْنَ اُمَّ اِنَّ الْقَوْمَ اسْتَضْعَفُوْنِيْ وَكَادُوْا يَقْتُلُوْنَنِيْ ۖؗ فَلَا تُشْمِتْ بِيَ الْاَعْدَآءَ وَلَا تَجْعَلْنِيْ مَعَ الْقَوْمِ الظّٰلِمِيْنَ ﴿١٥١﴾

१५१. तथा जब मूसा कोधित र दुखित भएर आफ्ना मानिसहरू कहाँ फर्के तब उनले भने, "मेरो अनुपस्थितिमा तिमीहरूले मेरो ठाउँमा जे-जे गर्‍यौ, त्यो अति नराम्रो थियो । के तिमीहरूले आफ्ना अल्लाहको आदेशलाई (नपर्खि आफ्ना निम्ति एउटा मार्गको परिकल्पना गर्नमा) हतार गर्‍यौ, ?" तथा उनले सिलेटहरूलाई राखे र आफ्ना भाइको टाउको तान्दै समाते । उनले (हारुनले) भने, "हे मेरी आमाका पुत्र, मानिसहरूले मलाई दुर्बल ठाने तथा झण्डै

मेरो हत्या गरे । अतः शत्रुहरूलाई मेरो हाँसो उडाउने मौका नदेउ र मलाई अन्यायकारी व्यक्तिहरूमा गणना नगर ।"

قَالَ رَبِّ اغْفِرْ لِي وَلِأَخِي وَأَدْخِلْنَا فِي رَحْمَتِكَ ۖ وَأَنتَ أَرْحَمُ الرَّاحِمِينَ ﴿١٥١﴾

१५२. उनले (मूसाले) भने, "हे मेरा अल्लाह, मलाई र मेरा भाइलाई क्षमा प्रदान गर, तथा हामीलाई आफ्नो करुणामा सामेल गर, तथा करुणा गर्नेहरूमध्ये तिमी परम करुणाशील रहेका छौ ।"

إِنَّ الَّذِينَ اتَّخَذُوا الْعِجْلَ سَيَنَالُهُمْ غَضَبٌ مِّن رَّبِّهِمْ وَذِلَّةٌ فِي الْحَيَاةِ الدُّنْيَا ۚ وَكَذَٰلِكَ نَجْزِي الْمُفْتَرِينَ ﴿١٥٢﴾

१५३. ती व्यक्तिहरू जसले बाच्छोलाई (उपास्य) तुल्याए, तिनीहरूलाई तिनका प्रतिपालकको प्रकोप र यस सांसारिक जीवनमा लाञ्छनाले समात्नेछ । तथा मिथ्या गढ्ने व्यक्तिहरूलाई हामी यसै प्रकार प्रतिदान दिने गर्छौं ।

وَالَّذِينَ عَمِلُوا السَّيِّئَاتِ ثُمَّ تَابُوا مِن بَعْدِهَا وَآمَنُوا إِنَّ رَبَّكَ مِن بَعْدِهَا لَغَفُورٌ رَّحِيمٌ ﴿١٥٣﴾

१५४. परन्तु ती व्यक्तिहरू जसले अपकर्म गरे तथा त्यसपछिपश्चाताप (प्रायश्चित) गरे र विश्वास स्थापना गरे, तिम्रा अल्लाह निश्चय नै त्यसपछि परम क्षमाशील, परम करुणाशील रहेका छन् ।

وَلَمَّا سَكَتَ عَن مُّوسَى الْغَضَبُ أَخَذَ الْأَلْوَاحَ ۖ وَفِي نُسْخَتِهَا هُدًى وَرَحْمَةٌ لِّلَّذِينَ هُمْ لِرَبِّهِمْ يَرْهَبُونَ ﴿١٥٤﴾

१५५. तथा जब मूसाको क्रोध शान्त भयो, उनले ती सिलोटहरू उठाए, जसका लिपिमा आफ्ना अल्लाहप्रति डराउने व्यक्तिहरूका निम्ति मार्गदर्शन र करुणा रहेको थियो ।

وَاخْتَارَ مُوسَىٰ قَوْمَهُ سَبْعِينَ رَجُلًا لِّمِيقَاتِنَا ۖ فَلَمَّا أَخَذَتْهُمُ الرَّجْفَةُ قَالَ رَبِّ لَوْ شِئْتَ أَهْلَكْتَهُم مِّن قَبْلُ وَإِيَّايَ ۖ أَتُهْلِكُنَا بِمَا فَعَلَ السُّفَهَاءُ مِنَّا ۖ إِنْ هِيَ إِلَّا فِتْنَتُكَ تُضِلُّ بِهَا مَن تَشَاءُ وَتَهْدِي مَن تَشَاءُ ۖ أَنتَ وَلِيُّنَا فَاغْفِرْ لَنَا وَارْحَمْنَا ۖ وَأَنتَ خَيْرُ الْغَافِرِينَ ﴿١٥٥﴾

१५६. तथा मूसाले हाम्रो निर्धारित समयका निम्ति आफ्ना जातिका मानिसहरूमध्ये सत्तरीजनालाई चुने । परन्तु जब तिनीहरूलाई भूकम्पले भेट्यो, तब उनले भने, "हे मेरा अल्लाह, यदि तिमीले चाहेका भए तिनीहरूलाई र मलाई (पनि यस) अघि नै विनाशपार्ने थियौ । के तिमी हामीलाई, हामीमध्ये केही मूर्ख व्यक्तिहरूले गरेका कार्यका कारण विनाश गर्न चाहन्छौ?

यो केही होइन परन्तु तिम्रा तर्फबाट एउटा परीक्षा । तिमी जसलाई चाहन्छौ, विनाश गर्छौ तथा जसलाई तिमी चाहन्छौ, सन्मार्ग प्रदर्शन गर्छौ । तिमी हाम्रा संरक्षक हौ, त्यसकारण हामीलाई क्षमा प्रदान गर र हामीमाथि अनुग्रह गर, कारण तिमी क्षमा गर्नेहरूमध्ये सर्वश्रेष्ठ क्षमाशील रहेका छौ ।

१५७. "तथा हाम्रा निम्ति यस संसारमा तथा परलोकमा पनि मङ्गल लेख । हामी क्षमायाचना गर्दै) तिमीतर्फ आएका छौं । (अल्लाहले) भने, "म जसलाई चाहन्छु, त्यसमाथि आफ्नो दण्ड बर्साउँछु, परन्तु मेरो करुणाले सबै वस्तुहरूलाई घेरेको छ, अतः जसले सत्कर्म गर्छन्, तथा जगात दिन्छन् र जसले हाम्रा चिह्नहरूप्रति विश्वास गर्छन् म निश्चय नै ती व्यक्तिहरूका निम्ति त्यो लेख्नेछु ।

وَاكْتُبْ لَنَا فِي هَٰذِهِ الدُّنْيَا حَسَنَةً وَفِي الْآخِرَةِ إِنَّا هُدْنَا إِلَيْكَ ۚ قَالَ عَذَابِي أُصِيبُ بِهِ مَنْ أَشَاءُ ۖ وَرَحْمَتِي وَسِعَتْ كُلَّ شَيْءٍ ۚ فَسَأَكْتُبُهَا لِلَّذِينَ يَتَّقُونَ وَيُؤْتُونَ الزَّكَاةَ وَالَّذِينَ هُمْ بِآيَاتِنَا يُؤْمِنُونَ ﴿١٥٦﴾

१५८. "जुन व्यक्तिहरूले तिनीहरूकहाँ रहेका तौरात र इन्जिल (धर्मोपदेश) मा उल्लेखित ती अनपढ सन्देशवाहक, नबीको अनुसरण गर्छन् उनले तिनीहरूलाई पुण्य गर्ने आदेश दिन्छन् तथा तिनीहरूलाई अपकर्मबाट रोक्छन्, तथा उत्तम वस्तुहरू तिनका निम्ति वैध ठहऱ्याउँछन् तथा खराव वस्तुहरूबाट तिनीहरूलाई रोक्छन् तथा तिनीहरूको बोझ र तिनीहरूलाई (बाँध्न) लादिएका कठालाहरू तिनीहरूबाट हटाउँछन् । अतः ती व्यक्तिहरू जसले उनीमाथि विश्वास गर्नेछन्, तथा उनको सम्मान र उनको समर्थन तथा उनको सहयोग गर्नेछन्, तथा उनीसँग अवतीर्ण गरिएको त्यस प्रकाशको अनुसरण गर्नेछन्– तिनीहरू अवश्य कृतकार्य हुनेछन् ।

الَّذِينَ يَتَّبِعُونَ الرَّسُولَ النَّبِيَّ الْأُمِّيَّ الَّذِي يَجِدُونَهُ مَكْتُوبًا عِنْدَهُمْ فِي التَّوْرَاةِ وَالْإِنْجِيلِ يَأْمُرُهُمْ بِالْمَعْرُوفِ وَيَنْهَاهُمْ عَنِ الْمُنْكَرِ وَيُحِلُّ لَهُمُ الطَّيِّبَاتِ وَيُحَرِّمُ عَلَيْهِمُ الْخَبَائِثَ وَيَضَعُ عَنْهُمْ إِصْرَهُمْ وَالْأَغْلَالَ الَّتِي كَانَتْ عَلَيْهِمْ ۚ فَالَّذِينَ آمَنُوا بِهِ وَعَزَّرُوهُ وَنَصَرُوهُ وَاتَّبَعُوا النُّورَ الَّذِي أُنْزِلَ مَعَهُ ۙ أُولَٰئِكَ هُمُ الْمُفْلِحُونَ ﴿١٥٧﴾

१५९. तिमी भन, "हे मानवजाति निश्चय नै म तिमीहरू सबैका निम्ति सन्देशवाहक

قُلْ يَا أَيُّهَا النَّاسُ إِنِّي رَسُولُ اللَّهِ

إِلَيْكُمْ جَمِيعًا الَّذِي لَهُ مُلْكُ السَّمَاوَاتِ وَالْأَرْضِ ۖ لَا إِلَٰهَ إِلَّا هُوَ يُحْيِي وَيُمِيتُ ۖ فَآمِنُوا بِاللَّهِ وَرَسُولِهِ النَّبِيِّ الْأُمِّيِّ الَّذِي يُؤْمِنُ بِاللَّهِ وَكَلِمَاتِهِ وَاتَّبِعُوهُ لَعَلَّكُمْ تَهْتَدُونَ ﴿١٥٨﴾

हुँ । (तिनै) अल्लाहका तर्फबाट जसलाई आकाशमण्डल र पृथ्वीको साम्राज्य प्राप्त छ उनीबाहेक अन्य कोही उपास्य छैन । उनी जीवनदान गर्छन् तथा उनी नै मृत्यु प्रदान गर्छन् । त्यसकारण अल्लाहप्रति तथा उनका ती अनपढ सन्देशवाहक नबी (सिद्ध) प्रति विश्वास गर, जसले अल्लाहप्रति र उनका वाणीहरूप्रति विश्वास गर्छन् ; तथा उनको अनुसरण गर ताकि तिमीहरूले सन्मार्ग प्राप्त गर्न सक ।

وَمِن قَوْمِ مُوسَىٰ أُمَّةٌ يَهْدُونَ بِالْحَقِّ وَبِهِ يَعْدِلُونَ ﴿١٥٩﴾

१६०. तथा मूसाका जातिका मानिसहरूमध्ये एउटा समूह यस्तो छ जसले सत्यका साथ मार्ग प्रदर्शन गर्छन् तथा त्यसैद्वारा न्याय गर्ने गर्छन् ।

وَقَطَّعْنَاهُمُ اثْنَتَيْ عَشْرَةَ أَسْبَاطًا أُمَمًا ۚ وَأَوْحَيْنَا إِلَىٰ مُوسَىٰ إِذِ اسْتَسْقَاهُ قَوْمُهُ أَنِ اضْرِب بِّعَصَاكَ الْحَجَرَ ۖ فَانبَجَسَتْ مِنْهُ اثْنَتَا عَشْرَةَ عَيْنًا ۖ قَدْ عَلِمَ كُلُّ أُنَاسٍ مَّشْرَبَهُمْ ۚ وَظَلَّلْنَا عَلَيْهِمُ الْغَمَامَ وَأَنزَلْنَا عَلَيْهِمُ الْمَنَّ وَالسَّلْوَىٰ ۖ كُلُوا مِن طَيِّبَاتِ مَا رَزَقْنَاكُمْ ۚ وَمَا ظَلَمُونَا وَلَٰكِن كَانُوا أَنفُسَهُمْ يَظْلِمُونَ ﴿١٦٠﴾

१६१. तथा हामीले तिनीहरूलाई (भिन्न-भिन्न) जातिस्वरूप बाह्र कविलामा विभाजित गर्‍यौं । तथा हामीले मूसालाई जब उनका मानिसहरूले उनीसँग पानी मागे (के भन्दै) आकाशवाणी गर्‍यौं भने, "आफ्नो लौराले त्यस ढुङ्गामाथि हिर्काउ;" तथा त्यसबाट बाह्रवटा मूलहरू फुटे; प्रत्येक कविलाले आ-आफ्नो पानी पिउने घाट चिने । तथा हामीले तिनीहरूमाथि बादलको छायाँ गर्‍यौं, तथा हामीले तिनीहरूका निम्ति मन्न र सल्वा अवतीर्ण गर्‍यौं: "हामीले तिमीहरूलाई प्रदान गरेका वस्तुहरूबाट उत्तम वस्तुहरू खाऊ ।" तथा तिनीहरूले हामीमाथि अत्याचार गरेनन्, परन्तु तिनीहरूले स्वयम् आफैंमाथि नै अत्याचार गरे ।

وَإِذْ قِيلَ لَهُمُ اسْكُنُوا هَٰذِهِ الْقَرْيَةَ وَكُلُوا مِنْهَا حَيْثُ شِئْتُمْ وَقُولُوا حِطَّةٌ وَادْخُلُوا الْبَابَ سُجَّدًا نَّغْفِرْ لَكُمْ خَطِيئَاتِكُمْ ۚ سَنَزِيدُ الْمُحْسِنِينَ ﴿١٦١﴾

१६२. तथा जब तिनीहरूलाई भनियो, "यस नगरमा बसोबास गर तथा त्यहाँ जहाँ-जहाँबाट चाहन्छौ खाऊ, र भन, ("हे अल्लाह ! हाम्रो) बोझ हलुका गर," तथा नम्रताका साथ ढोकामा प्रवेश गर,

हामी तिमीहरूलाई तिमीहरूका पापहरूप्रति क्षमा प्रदान गर्नेछौं, (तथा) निश्चय नै पुण्यकार्य गर्ने व्यक्तिहरूलाई हामी बढाएर दिनेछौं ।"

فَبَدَّلَ الَّذِينَ ظَلَمُوا مِنْهُمْ قَوْلًا غَيْرَ الَّذِي قِيلَ لَهُمْ فَأَرْسَلْنَا عَلَيْهِمْ رِجْزًا مِّنَ السَّمَاءِ بِمَا كَانُوا يَظْلِمُونَ ﴿١٦٢﴾

१६३. परन्तु तिनीहरू मध्ये उल्लङ्घनकारीहरूले जुन कुरा तिनीहरूलाई भनिएको थियो (त्यसलाई) एउटा अर्कै कुरामा परिवर्तन गरे । तिनीहरूको अपकर्मका कारण हामीले आकाशबाट तिनीहरूमाथि सजाय अवतीर्ण गर्‍यौं ।

وَسْأَلْهُمْ عَنِ الْقَرْيَةِ الَّتِي كَانَتْ حَاضِرَةَ الْبَحْرِ إِذْ يَعْدُونَ فِي السَّبْتِ إِذْ تَأْتِيهِمْ حِيتَانُهُمْ يَوْمَ سَبْتِهِمْ شُرَّعًا وَيَوْمَ لَا يَسْبِتُونَ ۙ لَا تَأْتِيهِمْ ۚ كَذَٰلِكَ ۚ نَبْلُوهُم بِمَا كَانُوا يَفْسُقُونَ ﴿١٦٣﴾

१६४. समुद्रको किनारमा अवस्थित रहेको त्यस नगरका सम्बन्धमा तिनीहरूलाई सोध । जब तिनीहरूले सबत्का सम्बन्धमा सीमोल्लङ्घन गरेका थिए; (अर्थात्) तिनीहरूको सबत्का दिन तिनीहरूका माछा तिनीहरूसमक्ष (पानीको) सतहमा आउने गर्थे, परन्तु तिनीहरूले जुन दिन सबत्को पालना गर्दैनथे त्यस दिन ती तिनीहरूसमक्ष आउँदैनथे । यसै प्रकार तिनीहरूको विरोधाचरणका कारण हामी तिनीहरूको परीक्षा लिन्थ्यौं ।

وَإِذْ قَالَتْ أُمَّةٌ مِّنْهُمْ لِمَ تَعِظُونَ قَوْمًا ۙ اللَّهُ مُهْلِكُهُمْ أَوْ مُعَذِّبُهُمْ عَذَابًا شَدِيدًا ۖ قَالُوا مَعْذِرَةً إِلَىٰ رَبِّكُمْ وَلَعَلَّهُمْ يَتَّقُونَ ﴿١٦٤﴾

१६५. तथा जब तिनीहरूमध्ये एउटा दलले भन्यो, "तिमीहरू किन त्यस जातिलाई धर्मोपदेश दिन्छौं जसलाई अल्लाहले विनाश गर्न अथवा कठोर दण्ड दिन लागिरहेछन्?" तिनीहरूले भने, "तिमीहरूका अल्लाहका दृष्टिमा दोषमुक्त हुनका निम्ति, तथा सम्भवतः तिनीहरू (अल्लाहसित) डराउलान् भनी ।"

فَلَمَّا نَسُوا مَا ذُكِّرُوا بِهِ أَنجَيْنَا الَّذِينَ يَنْهَوْنَ عَنِ السُّوءِ وَأَخَذْنَا الَّذِينَ ظَلَمُوا بِعَذَابٍ بَئِيسٍ بِمَا كَانُوا يَفْسُقُونَ ﴿١٦٥﴾

१६६. तथा जब तिनीहरूले आफूलाई परामर्श दिइएका ती सबै कुरा बिर्सिए, तब हामीले ती व्यक्तिहरूलाई बचायौं जसले अपकर्मबाट रोक्ने गर्थे, तथा उल्लङ्घनकारीहरूलाई तिनीहरूले गर्ने

गरेका पापहरूका कारण हामीले एउटा पीडादायक सजायद्वारा अँठ्यायौं ।

فَلَمَّا عَتَوْا عَنْ مَّا نُهُوْا عَنْهُ قُلْنَا
لَهُمْ كُوْنُوْا قِرَدَةً خٰسِئِيْنَ ۝١٦٦

१६७. तथा जब तिनीहरूले धृष्टतापूर्वक तिनीहरूलाई रोकिएको विषयमा विद्रोह गरे, (तब) हामीले तिनीहरूलाई भन्यो, "तिमीहरू तिरस्कृत बाँदर बन !"

وَاِذْ تَاَذَّنَ رَبُّكَ لَيَبْعَثَنَّ عَلَيْهِمْ
اِلٰى يَوْمِ الْقِيٰمَةِ مَنْ يَّسُوْمُهُمْ
سُوْٓءَ الْعَذَابِ ؕ اِنَّ رَبَّكَ لَسَرِيْعُ
الْعِقَابِ ۖۚ وَاِنَّهٗ لَغَفُوْرٌ رَّحِيْمٌ ۝١٦٧

१६८. तथा -त्यस समयको स्मरण गर) जब तिम्रा अल्लाहले तिनीहरू विरुद्ध पुनरुत्थानका दिनसम्म यस्ता व्यक्तिहरू खडा गर्दै रहने घोषणा गरे, जसले तिनीहरूलाई कठोर यातना दिइरहनेछन् । निश्चय नै, तिम्रा प्रतिपालक दण्ड दिनमा शीघ्र गर्छन् तथा निश्चय नै उनी परम क्षमाशील, परम करुणाशील छन् ।

وَقَطَّعْنٰهُمْ فِى الْاَرْضِ اُمَمًا ۚ مِنْهُمُ
الصّٰلِحُوْنَ وَمِنْهُمْ دُوْنَ ذٰلِكَ ۫ وَ
بَلَوْنٰهُمْ بِالْحَسَنٰتِ وَالسَّيِّاٰتِ لَعَلَّهُمْ
يَرْجِعُوْنَ ۝١٦٨

१६९. तथा हामीले तिनीहरूलाई संसारमा (भिन्न-भिन्न) जातिमा विभाजित गऱ्यौं । तिनीहरूमध्ये केही सत्यनिष्ठ छन् भने अन्य केही चाहिं त्यसको विपरीत रहेका छन् । तथा हामीले तिनीहरूलाई राम्रा वस्तुहरू र नराम्रा वस्तुहरूद्वारा जाँच्ने गऱ्यौं ताकि तिनीहरू फर्किऊन् ।

فَخَلَفَ مِنْۢ بَعْدِهِمْ خَلْفٌ وَّرِثُوا
الْكِتٰبَ يَاْخُذُوْنَ عَرَضَ هٰذَا الْاَدْنٰى
وَيَقُوْلُوْنَ سَيُغْفَرُ لَنَا ۚ وَاِنْ يَّاْتِهِمْ
عَرَضٌ مِّثْلُهٗ يَاْخُذُوْهُ ؕ اَلَمْ يُؤْخَذْ
عَلَيْهِمْ مِّيْثَاقُ الْكِتٰبِ اَنْ لَّا يَقُوْلُوْا
عَلَى اللّٰهِ اِلَّا الْحَقَّ وَدَرَسُوْا مَا فِيْهِ ؕ
وَالدَّارُ الْاٰخِرَةُ خَيْرٌ لِّلَّذِيْنَ يَتَّقُوْنَ ؕ
اَفَلَا تَعْقِلُوْنَ ۝١٦٩

१७०. त्यसपछि तिनीहरूपश्चात् एउटा (निकृष्ट) पिँढी आयो जो किताबको वारिस हुनपुग्यो । तिनीहरू यस निकृष्ट (संसार)का निकृष्ट वस्तुहरू प्राप्त गर्ने गर्छन् तथा भन्छन्, "हामीलाई क्षमा गरिनेछ ।" परन्तु यदि तिनीहरूसमक्ष (पुनः) त्यस्तै वस्तुहरू आएमा, तिनीहरूले तिनलाई लिनेछन् । के अल्लाहबारे सत्यबाहेक (अन्य केही कुरा) तिनीहरूले भन्नेछैनन् भनी तिनीहरूसँग किताबको वचन लिइएको थिएन र? तथा त्यसमा रहेका कुराहरूको तिनीहरूले अध्ययन गरिसकेका छन् । तथा परलोकको निवास सत्यनिष्ठहरूका निम्ति उत्तम रहेको

छ । त्यसो भए के तिमीहरू बुझ्दैनौ?

१७१. तथा ती व्यक्तिहरूका सम्बन्धमा, जसले पुस्तकलाई दृढताका साथ ग्रहण गर्छन् र नमाज अनुष्ठान गर्छन्, हामी निश्चय नै (यस्ता) सुधारक (व्यक्तिहरू) को प्रतिदान नाश हुन दिँदैनौं ।

وَالَّذِيْنَ يُمَسِّكُوْنَ بِالْكِتٰبِ وَاَقَامُوا الصَّلٰوةَ ؕ اِنَّا لَا نُضِيْعُ اَجْرَ الْمُصْلِحِيْنَ ﴿١٧٠﴾

१७२. तथा जब हामीले तिनीहरूमाथि पर्वतलाई झुकायौं, मानौं त्यो एउटा चादर (चंदुवा) थियो, तथा त्यो तिनीहरूमाथि खस्नै लाग्यो भनी तिनीहरूले ठाने, (हामीले भन्यौं) "हामीले तिमीहरूलाई प्रदान गरेको वस्तुलाई दृढताका साथ पक्र र त्यसमा रहेका कुराहरूलाई स्मरण राख ताकि तिमीहरूलाई बचाइयोस् ।"

وَاِذْ نَتَقْنَا الْجَبَلَ فَوْقَهُمْ كَاَنَّهٗ ظُلَّةٌ وَّظَنُّوْۤا اَنَّهٗ وَاقِعٌۢ بِهِمْ ۚ خُذُوْا مَاۤ اٰتَيْنٰكُمْ بِقُوَّةٍ وَّاذْكُرُوْا مَا فِيْهِ لَعَلَّكُمْ تَتَّقُوْنَ ﴿١٧١﴾

१७३. तथा जब तिम्रा अल्लाहले आदमका सन्तानहरूका ढाडबाट तिनका वंश उत्पन्न गरे र (यसो भन्दै) तिनीहरूलाई स्वयम्को साक्षी ठहऱ्याए, "के म तिमीहरूको अल्लाह होइन र?" तिनीहरूले भने, "हो, हामी साक्षी दिन्छौं ।" तिमीहरूले कहीं पुनरुत्थानका दिन "हामीलाई त यसबारे ज्ञात थिएन" भन्नेछौ कि भनी (उनले उक्त कुरा गर्छन्) ।"

وَاِذْ اَخَذَ رَبُّكَ مِنْۢ بَنِيْۤ اٰدَمَ مِنْ ظُهُوْرِهِمْ ذُرِّيَّتَهُمْ وَاَشْهَدَهُمْ عَلٰۤى اَنْفُسِهِمْ ۚ اَلَسْتُ بِرَبِّكُمْ ؕ قَالُوْا بَلٰى ۛۚ شَهِدْنَا ۛۚ اَنْ تَقُوْلُوْا يَوْمَ الْقِيٰمَةِ اِنَّا كُنَّا عَنْ هٰذَا غٰفِلِيْنَ ﴿١٧٢﴾

१७४. अथवा (कहीं) तिमीहरूले भन्नेछौ, "अतीतमा केवल हाम्रा पितृहरूले (अल्लाहका) सहभागीहरू खडा गर्थे हामी त (केवल) तिनीहरूपश्चात् एउटा पिंढी थियौं । त्यसोभए के तिमी हामीलाई ती मिथ्यावादी व्यक्तिहरूका कार्यकलापका कारण विनष्ट गर्छौ त?"

اَوْ تَقُوْلُوْۤا اِنَّمَاۤ اَشْرَكَ اٰبَآؤُنَا مِنْ قَبْلُ وَكُنَّا ذُرِّيَّةً مِّنْۢ بَعْدِهِمْ ۚ اَفَتُهْلِكُنَا بِمَا فَعَلَ الْمُبْطِلُوْنَ ﴿١٧٣﴾

१७५. तथा यसै प्रकार हामी चिह्नहरू स्पष्ट रूपले वर्णन गर्ने गर्छौं । ताकि तिनीहरूले अर्ती लेलान्) र तिनीहरू

وَكَذٰلِكَ نُفَصِّلُ الْاٰيٰتِ وَلَعَلَّهُمْ يَرْجِعُوْنَ ﴿١٧٤﴾

(हामीतर्फ) फर्केलान् ।

१७६. तथा तिनीहरूलाई त्यस व्यक्तिको कथा पढेर सुनाउ जसलाई हामीले आफ्ना चिह्नहरू प्रदान गरेका थियौं, परन्तु त्यो व्यक्ति तिनीहरूबाट पछि हट्यो । अतः सैतानले त्यसलाई पछ्यायो तथा त्यो व्यक्ति पथभ्रष्टहरूमध्ये (एक) हुनपुग्यो ।

وَاتْلُ عَلَيْهِمْ نَبَأَ الَّذِيٓ اٰتَيْنٰهُ اٰيٰتِنَا فَانْسَلَخَ مِنْهَا فَاَتْبَعَهُ الشَّيْطٰنُ فَكَانَ مِنَ الْغٰوِيْنَ ﴿١٧٥﴾

१७७. तथा यदि हामीले (त्यही) चाहेका भए, त्यसद्वारा हामी उसको उत्थान गर्न सक्ने थियौं; परन्तु त्यो पृथ्वीतर्फ झुक्यो र आफ्ना निकृष्ट चाहनाहरूकापछिलाग्यो । त्यसको अवस्था थकित भएर आफ्नो जिब्रो बाहिर निकाल्ने यस्तो कुकुरको अवस्थासदृश रहेको छ जसलाई चाहे तिमीहरूले ढुङ्गा हान्ने सङ्केत गर अथवा त्यसलाई त्यसै छाडिदेऊ -त्यसले तिमीहरूमाथि भुकि नै रहन्छ) । जुन व्यक्तिहरूले हाम्रा चिह्नहरूप्रति विश्वास गर्दैनन् तिनीहरूको अवस्था त्यस्तै रहेको छ । अतः तिमी (इतिहासबाट) घटनाहरू पढेर सुनाउ ताकि तिनीहरूले (तिनीहरूबाट शिक्षा लिन) चिन्तन मनन गर्न सकून् ।

وَلَوْ شِئْنَا لَرَفَعْنٰهُ بِهَا وَلٰكِنَّهٗٓ اَخْلَدَ اِلَى الْاَرْضِ وَاتَّبَعَ هَوٰىهُ ۚ فَمَثَلُهٗ كَمَثَلِ الْكَلْبِ ۚ اِنْ تَحْمِلْ عَلَيْهِ يَلْهَثْ اَوْ تَتْرُكْهُ يَلْهَثْ ؕ ذٰلِكَ مَثَلُ الْقَوْمِ الَّذِيْنَ كَذَّبُوْا بِاٰيٰتِنَا ۚ فَاقْصُصِ الْقَصَصَ لَعَلَّهُمْ يَتَفَكَّرُوْنَ ﴿١٧٦﴾

१७८. ती मानिसहरू जसले हाम्रा चिह्नहरूप्रति मिथ्यासरह व्यवहार गरे तिनीहरूको अवस्था अति निकृष्ट रहेको छ । तथा तिनीहरूले आफूमाथि नै अन्याय गरेका थिए ।

سَآءَ مَثَلَا نِ الْقَوْمُ الَّذِيْنَ كَذَّبُوْا بِاٰيٰتِنَا وَاَنْفُسَهُمْ كَانُوْا يَظْلِمُوْنَ ﴿١٧٧﴾

१७९. जसलाई अल्लाहले मार्ग देखाउँछन् त्यो व्यक्ति सन्मार्गमा रहेको छ । तथा ती व्यक्तिहरू जसलाई उनले पथभ्रष्ट ठहऱ्याउँछन्, तिनीहरू नै घाटाग्रस्त हुन पुग्नेछन् ।

مَنْ يَّهْدِ اللّٰهُ فَهُوَ الْمُهْتَدِيْ ۚ وَمَنْ يُّضْلِلْ فَاُولٰٓئِكَ هُمُ الْخٰسِرُوْنَ ﴿١٧٨﴾

وَلَقَدْ ذَرَأْنَا لِجَهَنَّمَ كَثِيرًا مِّنَ الْجِنِّ وَالْإِنسِ ۖ لَهُمْ قُلُوبٌ لَّا يَفْقَهُونَ بِهَا وَلَهُمْ أَعْيُنٌ لَّا يُبْصِرُونَ بِهَا وَلَهُمْ آذَانٌ لَّا يَسْمَعُونَ بِهَا ۚ أُولَٰئِكَ كَالْأَنْعَامِ بَلْ هُمْ أَضَلُّ ۚ أُولَٰئِكَ هُمُ الْغَافِلُونَ ﴿١٧٩﴾

१८०. वस्तुतः हामीले धेरै जिन्न र (त्यस्ता) मानिसहरूको सृष्टि गरेका छौं, जसको अन्त नर्क हुनेछ । तिनीहरूको मुटु त छ (परन्तु) त्यसद्वारा तिनीहरूले बुझ्दैनन्, तथा तिनीहरूका नेत्रहरू छन् (परन्तु) तिनीहरूद्वारा तिनीहरूले देख्दैनन्, तथा तिनीहरूका कानहरू छन् (परन्तु) तिनीहरूद्वारा तिनीहरूले सुन्दैनन् । तिनीहरू चौपायासरह छन्; त्यतिमात्र होइन तिनीहरू अझ विभ्रान्त रहेका छन् । तिनीहरू निश्चय नै (पूर्णरूपले) ध्यानरहित रहेका छन् ।

وَلِلَّهِ الْأَسْمَاءُ الْحُسْنَىٰ فَادْعُوهُ بِهَا ۖ وَذَرُوا الَّذِينَ يُلْحِدُونَ فِي أَسْمَائِهِ ۚ سَيُجْزَوْنَ مَا كَانُوا يَعْمَلُونَ ﴿١٨٠﴾

१८१. तथा सम्पूर्ण उत्कृष्ट गुणहरूका स्वामी -केवल) अल्लाह रहेका छन् । अतः तिनीहरूद्वारा उनलाई पुकार्ने गर । तथा जुन व्यक्तिहरू उनका गुणहरूका सम्बन्धमा सन्मार्ग छाडी विभ्रान्तमा परेका छन् । तिनीहरूलाई तिनको क्रियाकलापको मूल्य प्रदान गरिनेछ ।

وَمِمَّنْ خَلَقْنَا أُمَّةٌ يَهْدُونَ بِالْحَقِّ وَبِهِ يَعْدِلُونَ ﴿١٨١﴾

१८२. तथा तिनीहरूमध्ये हामीले केही यस्ता मानिसहरू सृष्टि गरेका छौं जसले सत्यका साथ (मानिसहरूलाई) मार्ग देखाउँछन् तथा त्यसैद्वारा न्यायस्थापना गर्ने गर्छन् ।

وَالَّذِينَ كَذَّبُوا بِآيَاتِنَا سَنَسْتَدْرِجُهُم مِّنْ حَيْثُ لَا يَعْلَمُونَ ﴿١٨٢﴾

१८३. तथा ती व्यक्तिहरू जसले हाम्रा चिह्नहरूलाई अस्वीकार गर्छन्, तिनीहरूलाई हामी बिस्तारै बिस्तारै यस्तो तरिकाले (विनष्टतातर्फ) ल्याउनेछौ जसलाई तिनीहरूले जान्दैनन् ।

وَأُمْلِي لَهُمْ ۚ إِنَّ كَيْدِي مَتِينٌ ﴿١٨٣﴾

१८४. तथा म तिनीहरूलाई अवसर दिन्छु, निश्चय नै, मेरो योजना अति सुदृढ रहेको छ ।

أَوَلَمْ يَتَفَكَّرُوا ۗ مَا بِصَاحِبِهِم مِّن جِنَّةٍ ۚ إِنْ هُوَ إِلَّا نَذِيرٌ مُّبِينٌ ﴿١٨٥﴾

१८५. के तिनीहरूका साथीमा पागलपन छैन भनी तिनीहरूले ध्यान दिएका छैनन्? उनी त केवल एकजना स्पष्ट सतर्ककारी हुन् ।

أَوَلَمْ يَنظُرُوا فِي مَلَكُوتِ السَّمَاوَاتِ وَالْأَرْضِ وَمَا خَلَقَ اللَّهُ مِن شَيْءٍ وَأَنْ عَسَىٰ أَن يَكُونَ قَدِ اقْتَرَبَ أَجَلُهُمْ ۖ فَبِأَيِّ حَدِيثٍ بَعْدَهُ يُؤْمِنُونَ ﴿١٨٦﴾

१८६. के तिनीहरूले आकासमण्डल र पृथ्वीको साम्राज्य र अल्लाहले सृष्टि गरेका सम्पूर्ण वस्तुहरूलाई दृष्टिगत गरेका छैनन्? तथा सम्भवत: तिनीहरूको (आफ्नो) म्याद अति निकट आइसकेको छ भन्ने कुराप्रति (के तिनीहरू दृष्टि गर्दैनन्?) त्यसोभए यसपछि कुन कुराप्रति तिनीहरूले विश्वास गर्नेछन् त?

مَن يُضْلِلِ اللَّهُ فَلَا هَادِيَ لَهُ ۚ وَيَذَرُهُمْ فِي طُغْيَانِهِمْ يَعْمَهُونَ ﴿١٨٧﴾

१८७. जसलाई अल्लाहले पथभ्रष्ट (भएको) ठहऱ्याउँछन्, त्यसको कोही पथप्रदर्शक हुन सक्दैन । तथा उनले त्यस्ता व्यक्तिहरूलाई आफ्नो उल्लङ्घनतामा विभ्रान्त भई घुम्नका निम्ति छाडिदिन्छन् ।

يَسْأَلُونَكَ عَنِ السَّاعَةِ أَيَّانَ مُرْسَاهَا ۖ قُلْ إِنَّمَا عِلْمُهَا عِندَ رَبِّي ۖ لَا يُجَلِّيهَا لِوَقْتِهَا إِلَّا هُوَ ۚ ثَقُلَتْ فِي السَّمَاوَاتِ وَالْأَرْضِ ۚ لَا تَأْتِيكُمْ إِلَّا بَغْتَةً ۗ يَسْأَلُونَكَ كَأَنَّكَ حَفِيٌّ عَنْهَا ۖ قُلْ إِنَّمَا عِلْمُهَا عِندَ اللَّهِ وَلَٰكِنَّ أَكْثَرَ النَّاسِ لَا يَعْلَمُونَ ﴿١٨٨﴾

१८८. तिनीहरूले तिमीलाई विशेष घडी कहिले आउनेछ भनी सोध्छन् । तिमी भन, "त्यसको ज्ञान ता केवल मेरा पालनहारलाई प्राप्त छ । त्यसलाई उनीबाहेक अरू कसैले पनि निर्धारित समयमा प्रकट गर्न सक्दैन । त्यो आकासमण्डल र पृथ्वीमाथि अति बोझिलो भएर रहेको छ । त्यो तिमीहरूप्रति आउने छैन परन्तु अकस्मात्।"तिनीहरूले त्यसबारे तिमीलाई राम्ररी जानकारी भएझैं गरी सोध्छन् । तिमी भन, "त्यसको ज्ञान केवल अल्लाहसित रहेको छ, परन्तु अधिकतर मानिसहरूलाई थाहा छैन ।

قُل لَّا أَمْلِكُ لِنَفْسِي نَفْعًا وَلَا ضَرًّا إِلَّا مَا شَاءَ اللَّهُ ۚ وَلَوْ كُنتُ أَعْلَمُ الْغَيْبَ لَاسْتَكْثَرْتُ مِنَ الْخَيْرِ وَمَا مَسَّنِيَ السُّوءُ ۚ إِنْ أَنَا إِلَّا نَذِيرٌ وَبَشِيرٌ

१८९. तिमी भन, "अल्लाहको इच्छा विपरित ममा न स्वयम्को मङ्गल साधन गर्ने शक्ति छ न अमङ्गल साधनको । तथा यदि ममा अदृष्टको ज्ञान रहेको भए म प्रशस्त मङ्गल साधन गर्ने थिएँ, र दु:खले

لِّقَوْمٍ يُّؤْمِنُوْنَ ۝١٨٩ ع

मलाई कदापि छुने थिएन । म त केवल विश्वास गर्ने व्यक्तिहरूका निम्ति सचेतक तथा शुभसन्देशवाहक हुँ ।"

هُوَ الَّذِيْ خَلَقَكُمْ مِّنْ نَّفْسٍ وَّاحِدَةٍ وَّجَعَلَ مِنْهَا زَوْجَهَا لِيَسْكُنَ اِلَيْهَا ۚ فَلَمَّا تَغَشّٰهَا حَمَلَتْ حَمْلًا خَفِيْفًا فَمَرَّتْ بِهٖ ۚ فَلَمَّآ اَثْقَلَتْ دَّعَوَا اللّٰهَ رَبَّهُمَا لَئِنْ اٰتَيْتَنَا صَالِحًا لَّنَكُوْنَنَّ مِنَ الشّٰكِرِيْنَ ۝١٩٠

१९०. ती उनी नै हुन् जसले तिमीहरूलाई एउटै ज्यानबाट सृष्टि गरे, तथा त्यसैबाट उसको जोडी बनाए । ताकि उसले त्यसबाट सुख प्राप्त गरोस् । तथा जब उसले त्यसलाई ढाक्यो तब त्यो गर्भवती भई तथा एउटा हलुको बोझ उठाई र त्यसलाई लिएर हिँड्न लागी । तथा जब त्यो बोझिलो हुनपुगी, तब तिनीहरू दुबैले आफ्ना अल्लाह अल्लाहसँग (यसो भन्दै) प्रार्थना गरे, "यदि तिमीले हामीलाई एउटा स्वास्थ्यवान (सन्तान) प्रदान गर्‍यौ भने, हामी निश्चय नै कृतज्ञ व्यक्तिहरूमध्येका बन्नेछौं ।"

فَلَمَّآ اٰتٰىهُمَا صَالِحًا جَعَلَا لَهٗ شُرَكَآءَ فِيْمَآ اٰتٰىهُمَا ۚ فَتَعٰلَى اللّٰهُ عَمَّا يُشْرِكُوْنَ ۝١٩١

१९१. परन्तु जब उनले तिनीहरूलाई एउटा स्वास्थ्यवान (सन्तान) प्रदान गर्छन्, तब तिनीहरू उनले दिएको सन्तानका सम्बन्धमा उनका समकक्ष (भागीदार) तुल्याउन प्रारम्भ गर्छन् । परन्तु जसलाई तिनीहरू (उनका) भागीदार तुल्याउँछन् अल्लाह ती सबैबाट अति उच्च रहेका छन्

اَيُشْرِكُوْنَ مَا لَا يَخْلُقُ شَيْـًٔا وَّهُمْ يُخْلَقُوْنَ ۝١٩٢

१९२. के तिनीहरू त्यस्तालाई (उनका) समकक्ष (भागीदार) तुल्याउँछन् जसले केही सृष्टि गर्दैनन्, तथा तिनीहरू स्वयम् सृष्टि गरिन्छन् ?

وَلَا يَسْتَطِيْعُوْنَ لَهُمْ نَصْرًا وَّلَآ اَنْفُسَهُمْ يَنْصُرُوْنَ ۝١٩٣

१९३. तथा उनीहरूलाई तिनीहरूले न कुनै सहयोग गर्नसक्छन् न त तिनीहरू स्वयम् आफैंलाई सहयोग गर्न सक्षम छन् ।

وَاِنْ تَدْعُوْهُمْ اِلَى الْهُدٰى لَا يَتَّبِعُوْكُمْ ۗ سَوَآءٌ عَلَيْكُمْ اَدَعَوْتُمُوْهُمْ اَمْ اَنْتُمْ صَامِتُوْنَ ۝١٩٤

१९४. तथा यदि तिमीहरूले तिनीहरूलाई मार्ग दर्शनको लागि बोलायौ भने तिनीहरूले तिमीहरूको अनुसरण गर्नेछैनन्

तिनीहरूलाई तिमीहरूले आह्वान गर्नु अथवा मौन रहनु तिमीहरूका निम्ति एक समान रहेको छ ।

१९५. निश्चय नै, अल्लाहलाई छाडी जसलाई तिमीहरू पुकाछौं, तिनीहरू (केवल) तिमीहरूजस्तै भृत्यहरू हुन् । तसर्थ तिनीहरूलाई पुकार यदि तिमीहरू सत्यनिष्ठ हौ भने तिनीहरूले तिमीहरूलाई जवाफ दिएर देखाऊन् ।

إِنَّ الَّذِينَ تَدْعُونَ مِن دُونِ اللَّهِ عِبَادٌ أَمْثَالُكُمْ فَادْعُوهُمْ فَلْيَسْتَجِيبُوا لَكُمْ إِن كُنتُمْ صَادِقِينَ ﴿١٩٤﴾

१९६. के तिनीहरूका पाउ छन्, जसद्वारा तिनीहरू हिँडडुल गर्छन्, अथवा के तिनीहरूका हात छन्, जसद्वारा तिनीहरू पक्रन्छन् अथवा के तिनीहरूका नेत्र छन्, जसद्वारा तिनीहरू देख्छन्, अथवा के तिनीहरूका कान छन् जसद्वारा तिनीहरू सुन्छन् । तिमी भन, जसलाई तिमीहरू (अल्लाहका) समकक्ष (भागीदार) तुल्याउँछौ, तिनीहरूलाई आह्वान गर, त्यसपश्चात् (तिमीहरू सबै मिलेर) मेरा विरुद्ध योजना बनाऊ, तथा मलाई कुनै अवसर नदेऊ ।

أَلَهُمْ أَرْجُلٌ يَمْشُونَ بِهَا أَمْ لَهُمْ أَيْدٍ يَبْطِشُونَ بِهَا أَمْ لَهُمْ أَعْيُنٌ يُبْصِرُونَ بِهَا أَمْ لَهُمْ آذَانٌ يَسْمَعُونَ بِهَا قُلِ ادْعُوا شُرَكَاءَكُمْ ثُمَّ كِيدُونِ فَلَا تُنظِرُونِ ﴿١٩٥﴾

१९७. "निस्सन्देह, मेरा संरक्षक भनेका (तिनै) अल्लाह हुन् जसले पुस्तक अवतीर्ण गरेका छन् । तथा उनले धर्मनिष्ठहरूको संरक्षण गर्छन् ।

إِنَّ وَلِيِّيَ اللَّهُ الَّذِي نَزَّلَ الْكِتَابَ وَهُوَ يَتَوَلَّى الصَّالِحِينَ ﴿١٩٦﴾

१९८. "तथा उनलाई छाडी जसलाई तिमीहरू पुकाछौं, तिनीहरूमा तिमीहरूलाई सहयोग गर्ने शक्ति छैन, न त तिनीहरू स्वयम् आफ्नै सहयोग गर्नसक्छन् ।

وَالَّذِينَ تَدْعُونَ مِن دُونِهِ لَا يَسْتَطِيعُونَ نَصْرَكُمْ وَلَا أَنفُسَهُمْ يَنصُرُونَ ﴿١٩٧﴾

१९९. तथा यदि तिमीहरूले तिनीहरूलाई मार्गदर्शनार्थ आह्वान गऱ्यौ भने, तिनीहरूले सुन्ने छैनन् । तथा तिमीले तिनीहरूलाई तिमीतर्फ नै दृष्टि गर्दैगरेको

وَإِن تَدْعُوهُمْ إِلَى الْهُدَىٰ لَا يَسْمَعُوا وَتَرَاهُمْ يَنظُرُونَ إِلَيْكَ وَهُمْ لَا يُبْصِرُونَ ﴿١٩٨﴾

देख्छौ, परन्तु तिनीहरूले भने देख्दैनन् ।

خُذِ الْعَفْوَ وَأْمُرْ بِالْعُرْفِ وَأَعْرِضْ
عَنِ الْجٰهِلِيْنَ ﴿٢٠٠﴾

२००. क्षमादान गर्ने गर, र दयाको आदेश दिने गर, तथा अज्ञानीहरूबाट टाढा रहने गर ।

وَإِمَّا يَنْزَغَنَّكَ مِنَ الشَّيْطٰنِ نَزْغٌ
فَاسْتَعِذْ بِاللّٰهِ ۚ إِنَّهٗ سَمِيْعٌ عَلِيْمٌ ﴿٢٠١﴾

२०१. तथा यदि सैतानले कुनै कुपरामर्शले तिमीलाई उत्कण्ठित तुल्याएमा, अल्लाहको आश्रयको याचना गर, निश्चय नै, उनी सर्वश्रोता, सर्वज्ञ छन् ।

إِنَّ الَّذِيْنَ اتَّقَوْا إِذَا مَسَّهُمْ
طٰٓئِفٌ مِّنَ الشَّيْطٰنِ تَذَكَّرُوْا فَإِذَا
هُمْ مُّبْصِرُوْنَ ﴿٢٠٢﴾

२०२. ती व्यक्तिहरू जो अल्लाहसित डराउँछन् (धर्मनिष्ठ छन्) जब तिनीहरूलाई सैतानको कुनै परामर्शले आक्रान्त तुल्याउँछ, (तब) तिनीहरू (अल्लाहको) स्मरण गर्छन्, तथा हेर ! तिनीहरू (सबै कुरालाई ठीक रूपमा) देख्न थाल्छन् ।

وَإِخْوَانُهُمْ يَمُدُّوْنَهُمْ فِي الْغَيِّ ثُمَّ
لَا يُقْصِرُوْنَ ﴿٢٠٣﴾

२०३. तथा तिनीहरूका भातृहरू त तिनीहरूलाई निरन्तर कुमार्गतर्फ डोऱ्याउँछन् तथा यसमा कुनै प्रकारको विश्राम लिँदैनन् ।

وَإِذَا لَمْ تَأْتِهِمْ بِاٰيَةٍ قَالُوْا لَوْ
لَا اجْتَبَيْتَهَا ۚ قُلْ إِنَّمَآ أَتَّبِعُ مَا يُوْحٰٓى
إِلَيَّ مِنْ رَّبِّيْ ۚ هٰذَا بَصَآئِرُ مِنْ رَّبِّكُمْ
وَهُدًى وَّرَحْمَةٌ لِّقَوْمٍ يُّؤْمِنُوْنَ ﴿٢٠٤﴾

२०४. तथा जब तिमी तिनीहरूसमक्ष कुनै चिह्न प्रस्तुत गर्दैनौ, तब तिनीहरू भन्छन्, "तिमीले त्यसलाई किन गढेर ल्याएनौ?" तिमी भन, " म त मेरा अल्लाहका तर्फबाट मप्रति आकाशवाणी गरिएका कुराहरूको मात्र अनुसरण गर्छु। यी (कुराहरू) तिमीहरूका अल्लाहका तर्फबाट उज्ज्वल चिह्नहरूस्वरूप,तथा विश्वासी व्यक्तिहरूका निम्ति मार्गदर्शन र करुणा रहेका छन् ।

وَإِذَا قُرِئَ الْقُرْاٰنُ فَاسْتَمِعُوْا لَهٗ وَ
أَنْصِتُوْا لَعَلَّكُمْ تُرْحَمُوْنَ ﴿٢٠٥﴾

२०५. तथा जब कुरानको पाठ गरिन्छ, त्यसलाई ध्यानपूर्वक सुन्ने गर र मौन धारण गर्ने गर, ताकि तिमीहरूमाथि करुणा गरियोस् ।

وَاذْكُرْ رَّبَّكَ فِيْ نَفْسِكَ تَضَرُّعًا وَّخِيْفَةً وَّدُوْنَ الْجَهْرِ مِنَ الْقَوْلِ بِالْغُدُوِّ وَالْاٰصَالِ وَلَا تَكُنْ مِّنَ الْغٰفِلِيْنَ ﴿٢٠٦﴾

२०६. तथा आफ्ना अल्लाहलाई आफ्नो मनमा नम्रता र डरका साथ स्मरण गर्ने गर, तथा बिहानी र बेलुकी (उनलाई) मधुरो स्वरमा (पुकार्ने गर) तथा बेवास्ता गर्ने व्यक्तिहरूमध्येको नबन ।

اِنَّ الَّذِيْنَ عِنْدَ رَبِّكَ لَا يَسْتَكْبِرُوْنَ عَنْ عِبَادَتِهٖ وَيُسَبِّحُوْنَهٗ وَلَهٗ يَسْجُدُوْنَ ﴿٢٠٧﴾ السجدة

२०७. निस्सन्देह, तिम्रा अल्लाहका निकट रहेका ती व्यक्तिहरू अहङ्कारका साथ उनको उपासनाबाट विमुख हुँदैनन्, अपितु तिनीहरू उनको गुणगान गर्छन् तथा उनीसमक्ष दण्डवत् गर्ने गर्छन् ।

سُورَةُ الْأَنْفَالِ مَدَنِيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ سِتٌّ وَّسَبْعُونَ آيَةً وَّعَشْرُ رُكُوعَاتٍ

## अल्–अन्फाल
(हिजरतपछि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ (١)

१. परम कृपालु, परम दयालु अल्लाहको नाममा ।

يَسْـَٔلُوْنَكَ عَنِ الْاَنْفَالِ ؕ قُلِ الْاَنْفَالُ لِلّٰهِ وَالرَّسُوْلِ ۚ فَاتَّقُوا اللّٰهَ وَاَصْلِحُوْا ذَاتَ بَيْنِكُمْ ۪ وَاَطِيْعُوا اللّٰهَ وَرَسُوْلَهٗۤ اِنْ كُنْتُمْ مُّؤْمِنِيْنَ (٢)

२. तिनीहरू तिमीसँग (युद्धमा) प्राप्त हुने धनका सम्बन्धमा सोध्छन् । तिमी भन, "त्यो धन अल्लाहको र सन्देशवाहकको रहेको छ । अतः अल्लाहसित डराऊ, तथा परस्परमा मामिलाहरूलाई ठीक गर तथा यदि तिमीहरू विश्वासी हौ भने अल्लाह तथा उनका सन्देशवाहकका आज्ञाकारी बन ।"

اِنَّمَا الْمُؤْمِنُوْنَ الَّذِيْنَ اِذَا ذُكِرَ اللّٰهُ وَجِلَتْ قُلُوْبُهُمْ وَاِذَا تُلِيَتْ عَلَيْهِمْ اٰيٰتُهٗ زَادَتْهُمْ اِيْمَانًا وَّعَلٰى رَبِّهِمْ يَتَوَكَّلُوْنَ (٣)

३. (साँचा) विश्वासीजन केवल तिनै हुन्, जसको हृदय अल्लाहको (नाम) उच्चारित हुनासाथ काँप्न थाल्छ तथा जब तिनीहरूसमक्ष उनका चिह्नहरूको पाठ गरिन्छ तब तिनीहरूले उनीहरूको आफ्नो विश्वासलाई झन बढाउँछन् तथा जसले आफ्ना प्रभुप्रति पूर्ण भरोसा राख्छन् ।

الَّذِيْنَ يُقِيْمُوْنَ الصَّلٰوةَ وَمِمَّا رَزَقْنٰهُمْ يُنْفِقُوْنَ (٤)

४. जसले नमाजको अनुष्ठान गर्छन् तथा हामीले उनीहरूलाई प्रदान गरेका वस्तुहरूबाट खर्च गर्ने गर्छन् ।

اُولٰٓئِكَ هُمُ الْمُؤْمِنُوْنَ حَقًّا ؕ لَهُمْ دَرَجٰتٌ عِنْدَ رَبِّهِمْ وَمَغْفِرَةٌ وَّرِزْقٌ كَرِيْمٌ (٥)

५. यिनीहरू नै ती साँचा विश्वासीजन हुन् । तिनीहरूका निम्ति तिनका प्रभुका जुनाफमा (विभिन्न तहका) दर्जाहरू र यसैप्रकार क्षमादान तथा सम्मानजनक जीवनवृत्ति रहेको छ ।

كَمَآ اَخْرَجَكَ رَبُّكَ مِنْ بَيْتِكَ بِالْحَقِّ ۪ وَاِنَّ فَرِيْقًا مِّنَ الْمُؤْمِنِيْنَ لَكٰرِهُوْنَ (٦)

६. यसै प्रकार तिम्रा प्रभु नै (थिए जसले) तिमीलाई तिम्रा घरबाट सत्यतापूर्वक निष्कासित गरेका थिए, वस्तुतः

विश्वासीहरूमध्ये एउटा समूहले मनपराउँदैनथ्यो, (त्यसकारण उनले तिम्रा शत्रुविरुद्ध तिम्रो सहयोग गरे) ।

يُجَادِلُونَكَ فِي الْحَقِّ بَعْدَ مَا تَبَيَّنَ كَأَنَّمَا يُسَاقُونَ إِلَى الْمَوْتِ وَهُمْ يَنْظُرُونَ ٦

७. तिनीहरू तिमीसँग सत्य प्रकट भएपश्चात् त्यसबारे यस प्रकार विवाद गर्छन्, मानौं तिनीहरूलाई मृत्युतर्फ घिस्याइएको होस् वस्तुतः तिनीहरूले (त्यसलाई) वास्तवमै देखिरहेका हुन् ।

وَإِذْ يَعِدُكُمُ اللَّهُ إِحْدَى الطَّائِفَتَيْنِ أَنَّهَا لَكُمْ وَتَوَدُّونَ أَنَّ غَيْرَ ذَاتِ الشَّوْكَةِ تَكُونُ لَكُمْ وَيُرِيدُ اللَّهُ أَنْ يُحِقَّ الْحَقَّ بِكَلِمَاتِهِ وَيَقْطَعَ دَابِرَ الْكَافِرِينَ ٧

८. तथा (त्यस समयको स्मरण गर), जब अल्लाहले तिमीहरूलाई दुई समूहमध्ये* एक समूह तिमीहरूको हुनेछ भनी वचन दिएका थिए, तथा अस्त्रहीन रहेको समूह चाहिँ तिमीहरूलाई प्राप्त होस् भन्ने तिमीहरूको चाहना रहेको थियो, परन्तु अल्लाह भने आफ्ना वचनहरूद्वारा सत्यको स्थापना गर्न र अविश्वासीहरूको जरैदेखि निर्मूल पार्न चाहन्थे ,

لِيُحِقَّ الْحَقَّ وَيُبْطِلَ الْبَاطِلَ وَلَوْ كَرِهَ الْمُجْرِمُونَ ٨

९. ताकि, उनले सत्यको स्थापना गर्न सकून् तथा असत्यलाई निर्मूल गरून्, यद्यपि अपराधी व्यक्तिहरूलाई यो कार्य (कति नै) नराम्रो किन नलागोस् ।

إِذْ تَسْتَغِيثُونَ رَبَّكُمْ فَاسْتَجَابَ لَكُمْ أَنِّي مُمِدُّكُمْ بِأَلْفٍ مِنَ الْمَلَائِكَةِ مُرْدِفِينَ ٩

१०. जब तिमीहरूले आफ्ना प्रभुसँग सहायताका निम्ति प्रार्थना-पुकार गर्‍यौ तथा उनले तिमीहरुलाई (यसो भन्दै) उत्तर दिए, "एक अर्काको अनुसरण गर्ने हजारौं फरिस्ताहरूद्वारा म तिमीहरूको सहयोग गर्नेछु ।"

وَمَا جَعَلَهُ اللَّهُ إِلَّا بُشْرَى وَلِتَطْمَئِنَّ بِهِ قُلُوبُكُمْ وَمَا النَّصْرُ إِلَّا مِنْ عِنْدِ اللَّهِ إِنَّ اللَّهَ عَزِيزٌ حَكِيمٌ ١٠

११. तथा अल्लाहले केवल एउटा शुभसन्देशको रूपमा तथा तिमीहरूको मनलाई त्यसद्वारा शान्ति प्राप्त होस् भनी

* मक्काको पूर्ण शस्त्रसाधनयुक्त सेना र अर्को सामान्य शस्त्रयुक्त त्यो दल जुन उत्तर दिशाबाट मक्कातर्फ अघि बढिरहेको थियो ।

त्यसो गरेका थिए । परन्तु, सहायता त केवल अल्लाहका जुनाफबाटै आउँछ, निश्चय नै अल्लाह सर्वशक्तिमान, तत्त्वज्ञ छन् ।

إِذْ يُغَشِّيكُمُ النُّعَاسَ أَمَنَةً مِّنْهُ وَيُنَزِّلُ عَلَيْكُم مِّنَ السَّمَاءِ مَاءً لِّيُطَهِّرَكُم بِهِ وَيُذْهِبَ عَنكُمْ رِجْزَ الشَّيْطَانِ وَلِيَرْبِطَ عَلَىٰ قُلُوبِكُمْ وَيُثَبِّتَ بِهِ الْأَقْدَامَ ﴿١١﴾

११. जब उनले तिमीहरूमाथि आफ्ना तर्फबाट सुरक्षाको चिह्नस्वरूप निद्रा अवतीर्ण गरे तथा तिमीहरूप्रति बादलबाट पानी बर्षाए, ताकि त्यसद्वारा उनले तिमीहरूलाई उत्तम तुल्याउन् तथा सैतानको अशुद्धता तिमीहरूबाट मेटाउन तथा तिमीहरूका हृदयलाई शक्तिशाली तुल्याउन् र त्यसद्वारा (तिमीहरूका) कदम सुदृढ गरून् ।

إِذْ يُوحِي رَبُّكَ إِلَى الْمَلَائِكَةِ أَنِّي مَعَكُمْ فَثَبِّتُوا الَّذِينَ آمَنُوا ۚ سَأُلْقِي فِي قُلُوبِ الَّذِينَ كَفَرُوا الرُّعْبَ فَاضْرِبُوا فَوْقَ الْأَعْنَاقِ وَاضْرِبُوا مِنْهُمْ كُلَّ بَنَانٍ ﴿١٢﴾

१२. जब तिम्रा प्रभुले फरिस्ताहरूप्रति के भन्दै आकाशवाणी गरे भने, "म तिमीहरूसँग छु, त्यसकारण विश्वासीजनलाई दृढता प्रदान गर । म अविश्वासी व्यक्तिहरूका हृदयमा भय उप्जाउनेछु । अतः (तिनीहरूका) गर्धनमाथि प्रहार गर, तथा सबै औंलाका टुप्पाहरूमा हिर्काऊ ।"

ذَٰلِكَ بِأَنَّهُمْ شَاقُّوا اللَّهَ وَرَسُولَهُ ۚ وَمَن يُشَاقِقِ اللَّهَ وَرَسُولَهُ فَإِنَّ اللَّهَ شَدِيدُ الْعِقَابِ ﴿١٣﴾

१३. यो यसैकारणले हो किनभने तिनीहरूले अल्लाह र उनका सन्देशवाहकको विरोध गरेका छन् । तथा जसले अल्लाह र उनका सन्देशवाहकको विरोध गर्छ, (तब) अल्लाह निश्चय नै प्रतिशोध लिनमा अति कठोर छन् ।

ذَٰلِكُمْ فَذُوقُوهُ وَأَنَّ لِلْكَافِرِينَ عَذَابَ النَّارِ ﴿١٤﴾

१४. (यही तिमीहरूको दण्ड हो), अतः यसलाई चाख, तथा अविश्वासीहरूका निम्ति अग्निरूपी दण्ड रहेको छ (भनी जान) ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا إِذَا لَقِيتُمُ الَّذِينَ كَفَرُوا زَحْفًا فَلَا تُوَلُّوهُمُ

१५. हे विश्वासीजन हो । जब तिमीहरूको सामना आक्रमणका निम्ति लस्करको

الْأَدْبَارَ ﴿١٦﴾

रूपमा अविश्वासी व्यक्तिहरूसँग हुन्छ, तब तिनीहरूतर्फ (आफ्नो) पिठ्यूँ नदेखाऊ ।

وَمَن يُوَلِّهِمْ يَوْمَئِذٍ دُبُرَهُ إِلَّا مُتَحَرِّفًا لِّقِتَالٍ أَوْ مُتَحَيِّزًا إِلَىٰ فِئَةٍ فَقَدْ بَاءَ بِغَضَبٍ مِّنَ اللَّهِ وَمَأْوَاهُ جَهَنَّمُ ۖ وَبِئْسَ الْمَصِيرُ ﴿١٧﴾

१७. तथा त्यस्तो दिनमा सिवाय युद्धको दाउपेच परिवर्तन गर्न अथवा (आफ्नै) दलमा (समावेश) हुन दिशा परिवर्तन गरेको अवस्थाबाहेक जसले तिनीहरूतर्फ पिठ्यूँ देखाउँछ, त्यसले अवश्य स्वयम्लाई अल्लाहको प्रकोपको पात्र बनाउँछ तथा त्यसको निवास नर्क हुनेछ । तथा त्यो अति नै निकृष्ट विश्राम स्थान रहेको छ ।

فَلَمْ تَقْتُلُوهُمْ وَلَٰكِنَّ اللَّهَ قَتَلَهُمْ ۚ وَمَا رَمَيْتَ إِذْ رَمَيْتَ وَلَٰكِنَّ اللَّهَ رَمَىٰ ۚ وَلِيُبْلِيَ الْمُؤْمِنِينَ مِنْهُ بَلَاءً حَسَنًا ۚ إِنَّ اللَّهَ سَمِيعٌ عَلِيمٌ ﴿١٨﴾

१८. अतः तिनीहरूलाई तिमीहरूले मारेका होइनौ, परन्तु अल्लाहले नै तिनीहरूलाई मारेका हुन् । तथा जब तिमीले हानेका थियौ, त्यो तिमीले होइन परन्तु अल्लाहले नै हानेका थिए, (ताकि उनले अविश्वासीहरूलाई पराजित गरून्) तथा उनले आफ्ना तर्फबाट विश्वासीहरूको एउटा परीक्षा लिउन्– एउटा उत्तम परीक्षा– निश्चय नै अल्लाह सर्वश्रोता, सर्वज्ञ छन् ।

ذَٰلِكُمْ وَأَنَّ اللَّهَ مُوهِنُ كَيْدِ الْكَافِرِينَ ﴿١٩﴾

१९. (भएको कुरो) त्यही नै हो । तथा अल्लाह नै हुन् जसले अविश्वासीहरूको षडयन्त्रलाई दुर्बल तुल्याउँछन् (भन्ने जान) ।

إِن تَسْتَفْتِحُوا فَقَدْ جَاءَكُمُ الْفَتْحُ ۖ وَإِن تَنتَهُوا فَهُوَ خَيْرٌ لَّكُمْ ۖ وَإِن تَعُودُوا نَعُدْ وَلَن تُغْنِيَ عَنكُمْ فِئَتُكُمْ شَيْئًا وَلَوْ كَثُرَتْ وَأَنَّ اللَّهَ مَعَ الْمُؤْمِنِينَ ﴿٢٠﴾

२०. यदि तिमीहरूले निर्णय चाहेका थियौ भने, तिमीहरूसमक्ष निर्णयको आगमन भइसकेको छ तथा यदि तिमीहरू निवृत्त रह्यौ भने त्यो तिमीहरूका निम्ति अवश्य लाभदायक हुनेछ, परन्तु यदि तिमीहरू (युद्धतर्फ) फर्कियौ भने, हामी (पनि) फर्कनेछौं । तथा तिमीहरूको दलले तिमीहरूलाई कदापि कुनै लाभ पुऱ्याउन सक्नेछैन चाहे त्यो कति नै ठूलो संख्याको किन नहोस्, तथा अल्लाह विश्वासीहरूसँग

रहेका छन् (भनी जान)।

२१. हे विश्वासीजन हो । अल्लाह तथा उनका सन्देशवाहकको आज्ञापालन गर, तथा तिमीहरूले (उनको वाणी) सुनिरहेका छौ भने उनीबाट विमुख नहोऊ ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوٓا۟ أَطِيعُوا۟ ٱللَّهَ وَرَسُولَهُۥ وَلَا تَوَلَّوْا۟ عَنْهُ وَأَنتُمْ تَسْمَعُونَ ﴿٢١﴾

२२. तथा ती व्यक्तिहरूझैं नबन जो भन्छन्, "हामीले सुन्यौं," परन्तु तिनीहरू सुन्दैनन् ।

وَلَا تَكُونُوا۟ كَٱلَّذِينَ قَالُوا۟ سَمِعْنَا وَهُمْ لَا يَسْمَعُونَ ﴿٢٢﴾

२३. निश्चय नै, अल्लाहका दृष्टिमा सबैभन्दा निकृष्ट पशु तिनै काना र लाटा व्यक्तिहरू रहेका छन् जसमा विवेक छैन ।

إِنَّ شَرَّ ٱلدَّوَآبِّ عِندَ ٱللَّهِ ٱلصُّمُّ ٱلْبُكْمُ ٱلَّذِينَ لَا يَعْقِلُونَ ﴿٢٣﴾

२४. तथा यदि अल्लाहले तिनीहरूमा कुनै प्रकारको राम्रो कुरा देख्थे भने, अवश्य नै, तिनीहरूलाई सुनाउने थिए । तथा यदि (अब) उनले तिनीहरूलाई सुनाउँथे भने पनि तिनीहरू विमुख भई हिँड्ने छन् ।

وَلَوْ عَلِمَ ٱللَّهُ فِيهِمْ خَيْرًا لَّأَسْمَعَهُمْ ۖ وَلَوْ أَسْمَعَهُمْ لَتَوَلَّوا۟ وَّهُم مُّعْرِضُونَ ﴿٢٤﴾

२५. हे विश्वासीजन हो ! अल्लाह तथा सन्देशवाहकले जब तिमीहरूलाई जीवन प्रदान गर्नका निम्ति आह्वान गर्छन् तब उत्तर देऊ तथा अल्लाह मानिस तथा उसका हृदयबीच विद्यमान छन्, तथा तिमीहरूलाई उनीसमक्ष एकत्रित गरिनेछ भनी जान ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوا۟ ٱسْتَجِيبُوا۟ لِلَّهِ وَلِلرَّسُولِ إِذَا دَعَاكُمْ لِمَا يُحْيِيكُمْ ۖ وَٱعْلَمُوٓا۟ أَنَّ ٱللَّهَ يَحُولُ بَيْنَ ٱلْمَرْءِ وَقَلْبِهِۦ وَأَنَّهُۥٓ إِلَيْهِ تُحْشَرُونَ ﴿٢٥﴾

२६. तथा एउटा यस्तो विपत्तिप्रति सावधान रहने गर, जसले तिमीहरूमध्ये केवल अत्याचारी व्यक्तिहरूलाई मात्र प्रहार गर्ने छैन । तथा अल्लाह दण्ड दिनमा अति कठोर छन् भनी जान ।

وَٱتَّقُوا۟ فِتْنَةً لَّا تُصِيبَنَّ ٱلَّذِينَ ظَلَمُوا۟ مِنكُمْ خَآصَّةً ۖ وَٱعْلَمُوٓا۟ أَنَّ ٱللَّهَ شَدِيدُ ٱلْعِقَابِ ﴿٢٦﴾

२७. तथा (त्यस समयको स्मरण गर), जब तिमीहरू अल्पसंख्यक थियौ, तथा पृथ्वीमा दुर्बल ठानिन्थ्यौ, (तथा) मानिसहरूले

وَٱذْكُرُوٓا۟ إِذْ أَنتُمْ قَلِيلٌ مُّسْتَضْعَفُونَ فِى ٱلْأَرْضِ تَخَافُونَ أَن يَتَخَطَّفَكُمُ ٱلنَّاسُ فَـَٔاوَىٰكُمْ وَأَيَّدَكُم بِنَصْرِهِۦ وَ

رَزَقَكُمْ مِّنَ الطَّيِّبٰتِ لَعَلَّكُمْ تَشْكُرُوْنَ ﴿٢٧﴾

तिमीहरूलाई आक्रमण गरी लैजाने छन् कि भनी डराउने गर्थ्यौ, परन्तु उनले तिमीहरूलाई आश्रय दिएर आफ्नो सहयोगद्वारा तिमीहरूलाई शक्ति प्रदान गरे तथा उत्तम वस्तुहरूबाट तिमीहरूलाई जीवनवृत्ति प्रदान गरे ताकि तिमीहरू कृतज्ञ बन ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا لَا تَخُوْنُوا اللّٰهَ وَ الرَّسُوْلَ وَ تَخُوْنُوْٓا اَمٰنٰتِكُمْ وَ اَنْتُمْ تَعْلَمُوْنَ ﴿٢٨﴾

२८. हे विश्वासीजन हो । अल्लाह तथा सन्देशवाहकसँग विश्वासघात नगर, जबकि तिमीहरू (बारम्बार) आफ्ना अमानतहरू (नासोहरू) प्रति विश्वासघात गर्छौ र त्यस कुरालाई तिमीहरू जान्दछौ ।

وَاعْلَمُوْٓا اَنَّمَآ اَمْوَالُكُمْ وَ اَوْلَادُكُمْ فِتْنَةٌ ۙ وَّ اَنَّ اللّٰهَ عِنْدَهٗٓ اَجْرٌ عَظِيْمٌ ﴿٢٩﴾

२९. तथा के जानि राख भने तिमीहरूका धन सम्पत्ति र तिमीहरूका सन्तानहरू केवल परीक्षास्वरूप हुन् तथा अल्लाहका जुनाफमा नै एउटा महान प्रतिदान रहेको छ ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْٓا اِنْ تَتَّقُوا اللّٰهَ يَجْعَلْ لَّكُمْ فُرْقَانًا وَّ يُكَفِّرْ عَنْكُمْ سَيِّاٰتِكُمْ وَ يَغْفِرْ لَكُمْ ؕ وَ اللّٰهُ ذُو الْفَضْلِ الْعَظِيْمِ ﴿٣٠﴾

३०. हे विश्वासीजन हो ! यदि तिमीहरू अल्लाहसित डरायौ भने, उनले तिमीहरूलाई एउटा विशिष्टता प्रदान गर्नेछन् तथा तिमीहरूबाट तिमीहरूका अवगुणहरू मोचन गर्नेछन् तथा तिमीहरूलाई क्षमा प्रदान गर्नेछन्, तथा अल्लाह महान अनुग्रहका (स्वामी) रहेका छन् ।

وَ اِذْ يَمْكُرُ بِكَ الَّذِيْنَ كَفَرُوْا لِيُثْبِتُوْكَ اَوْ يَقْتُلُوْكَ اَوْ يُخْرِجُوْكَ ؕ وَ يَمْكُرُوْنَ وَ يَمْكُرُ اللّٰهُ ؕ وَ اللّٰهُ خَيْرُ الْمٰكِرِيْنَ ﴿٣١﴾

३१. तथा (त्यस समयको स्मरण गर) जब अविश्वासीहरूले तिमीलाई बन्दी बनाउनका निम्ति अथवा तिम्रो हत्या गर्न अथवा तिमीलाई निर्वासित गर्नका निम्ति षडयन्त्र रचेका थिए । तथा तिनीहरूले योजना बनाए तथा अल्लाहले (पनि) योजना बनाए, र अल्लाह नै योजनाविद्हरूमध्ये सर्वोत्कृष्ट रहेका छन् ।

وَإِذَا تُتْلَىٰ عَلَيْهِمْ آيَاتُنَا قَالُوا قَدْ سَمِعْنَا لَوْ نَشَاءُ لَقُلْنَا مِثْلَ هَٰذَا ۙ إِنْ هَٰذَا إِلَّا أَسَاطِيرُ الْأَوَّلِينَ ﴿٣١﴾

३२. तथा जब तिनीहरूप्रति हाम्रा आयात हरूको पाठ गरिन्छ (तब) तिनीहरू भन्छन्, "हामीले सुन्यौं । यदि हामीले चाहेका भए हामी पनि निश्चय नै यस्तै प्रस्तुत गर्न सक्ने थियौं । यी त अतीतका मानिसहरूका कथाहरूबाहेक केही होइनन् ।"

وَإِذْ قَالُوا اللَّهُمَّ إِنْ كَانَ هَٰذَا هُوَ الْحَقَّ مِنْ عِنْدِكَ فَأَمْطِرْ عَلَيْنَا حِجَارَةً مِنَ السَّمَاءِ أَوِ ائْتِنَا بِعَذَابٍ أَلِيمٍ ﴿٣٢﴾

३३. तथा -त्यस समयको स्मरण गर) जब तिनीहरूले भने, "हे अल्लाह, यदि तिम्रा तर्फबाट वास्तवमा यही सत्य हो भने, हामीमाथि आकाशबाट ढुङ्गाको वर्षा बर्साउ अथवा हामीमाथि कुनै पीडादायक दण्ड ल्याउ ।"

وَمَا كَانَ اللَّهُ لِيُعَذِّبَهُمْ وَأَنْتَ فِيهِمْ ۚ وَمَا كَانَ اللَّهُ مُعَذِّبَهُمْ وَهُمْ يَسْتَغْفِرُونَ ﴿٣٣﴾

३४. परन्तु तिमी उनीहरूबीच रहुन्जेलसम्म अल्लाहले उनीहरूलाई दण्ड दिन सक्दैनथे तथा तिनीहरूले क्षमा याचना गरिरहेका अवस्थामा पनि अल्लाहले तिनीहरूलाई दण्ड दिन सक्दैनथे ।

وَمَا لَهُمْ أَلَّا يُعَذِّبَهُمُ اللَّهُ وَهُمْ يَصُدُّونَ عَنِ الْمَسْجِدِ الْحَرَامِ وَمَا كَانُوا أَوْلِيَاءَهُ ۚ إِنْ أَوْلِيَاؤُهُ إِلَّا الْمُتَّقُونَ وَلَٰكِنَّ أَكْثَرَهُمْ لَا يَعْلَمُونَ ﴿٣٤﴾

३५. तथा तिनीहरूलाई अल्लाइले दण्ड नदिउन् भनेर (अब) तिनीहरूसँग के बहाना शेष रहेको छ र, वस्तुत: तिनीहरू (मानिसहरूलाई) उत्तम मस्जिदबाट रोक्छन्, तथा तिनीहरू त्यसका (वास्तविक) संरक्षक पनि होइनन्? त्यसका (वास्तविक) संरक्षक त केवल अल्लाहसित डराउने व्यक्तिहरू हुन्, परन्तु तिनीहरूमध्ये अधिकतर व्यक्तिहरूलाई थाहा छैन ।

وَمَا كَانَ صَلَاتُهُمْ عِنْدَ الْبَيْتِ إِلَّا مُكَاءً وَتَصْدِيَةً ۚ فَذُوقُوا الْعَذَابَ بِمَا كُنْتُمْ تَكْفُرُونَ ﴿٣٥﴾

३६. तथा त्यस गृहनजिक तिनीहरूको नमाज (प्रार्थना) सुसेल्नु र ताली पिट्नुबाहेक अन्य केही होइन । अत: तिमीहरुको आफ्नो अविश्वासका कारण दण्ड चाख ।"

إِنَّ الَّذِينَ كَفَرُوا يُنفِقُونَ أَمْوَالَهُمْ لِيَصُدُّوا عَن سَبِيلِ اللَّهِ ۚ فَسَيُنفِقُونَهَا ثُمَّ تَكُونُ عَلَيْهِمْ حَسْرَةً ثُمَّ يُغْلَبُونَ ۗ وَالَّذِينَ كَفَرُوا إِلَىٰ جَهَنَّمَ يُحْشَرُونَ ﴿٣٦﴾

३७. निश्चय नै, ती अविश्वासी व्यक्तिहरू मानिसहरूलाई अल्लाहको मार्गबाट विमुख गर्नका निम्ति आफ्नो सम्पत्ति खर्च गर्छन् । तिनीहरूले अवश्य लगातार त्यसलाई खर्च गर्नेछन्, परन्तु त्यसपछि तिनीहरूका निम्ति (आफ्नो असफलताप्रति शोक र) विलाप गर्नु मात्र त्यसको परिणाम हुनेछ तथा त्यसपछि तिनीहरूलाई (पूर्णरूपमा) पराजित गरिनेछ । तथा अविश्वासीहरूलाई एकत्रित गरी नर्कतर्फ लगिनेछ ।

لِيَمِيزَ اللَّهُ الْخَبِيثَ مِنَ الطَّيِّبِ وَيَجْعَلَ الْخَبِيثَ بَعْضَهُ عَلَىٰ بَعْضٍ فَيَرْكُمَهُ جَمِيعًا فَيَجْعَلَهُ فِي جَهَنَّمَ ۚ أُولَٰئِكَ هُمُ الْخَاسِرُونَ ﴿٣٧﴾

३८. ताकि अल्लाहले अउत्तमलाई उत्तमबाट पृथक गरून् तथा अउत्तमलाई एक अर्का माथि राखेर तिनीहरू सबैलाई एउटै थुप्रोको रूपमा नर्कमा होमिदिउन् । यिनीहरू नै निस्सन्देह घाटा खाने व्यक्तिहरू रहेका छन् ।

قُل لِّلَّذِينَ كَفَرُوا إِن يَنتَهُوا يُغْفَرْ لَهُم مَّا قَدْ سَلَفَ وَإِن يَعُودُوا فَقَدْ مَضَتْ سُنَّتُ الْأَوَّلِينَ ﴿٣٨﴾

३९. अविश्वासी व्यक्तिहरूलाई भनिदेउ, यदि तिनीहरूले आफूलाई रोकेमा अतीतमा भएका क्रियाकलापहरूप्रति तिनीहरूलाई क्षमादान गरिनेछ, तथा यदि तिनीहरू (त्यसतर्फ) फर्किए भने, निश्चय नै तिनीहरू अघिका) मानिसहरूको दृष्टान्त घटित भइसकेको छ ।

وَقَاتِلُوهُمْ حَتَّىٰ لَا تَكُونَ فِتْنَةٌ وَيَكُونَ الدِّينُ كُلُّهُ لِلَّهِ ۚ فَإِنِ انتَهَوْا فَإِنَّ اللَّهَ بِمَا يَعْمَلُونَ بَصِيرٌ ﴿٣٩﴾

४०. तथा उत्पीडन समाप्त भई धर्म पूर्वरूपमा अल्लाहका निम्ति नहुन्जेलसम्म तिनीहरूसँग संघर्ष गर । परन्तु यदि तिनीहरूले आफूलाई रोकेमा अल्लाहले अवश्य तिनीहरूको कार्यकलाप देखिरहेछन् ।

وَإِن تَوَلَّوْا فَاعْلَمُوا أَنَّ اللَّهَ مَوْلَاكُمْ ۚ نِعْمَ الْمَوْلَىٰ وَنِعْمَ النَّصِيرُ ﴿٤٠﴾

४१. तथा यदि तिनीहरूले पिठ्यूँ देखाएमा अल्लाह तिमीहरूका संरक्षक रहेका छन् भनी जान । (उनी) कति उत्कृष्ट संरक्षक तथा कति उत्कृष्ट सहयोगी रहेका छन् ।

وَاعْلَمُوْٓا اَنَّمَا غَنِمْتُمْ مِّنْ شَيْءٍ فَاَنَّ لِلّٰهِ خُمُسَهٗ وَلِلرَّسُوْلِ وَلِذِي الْقُرْبٰى وَالْيَتٰمٰى وَالْمَسٰكِيْنِ وَابْنِ السَّبِيْلِ ۙ اِنْ كُنْتُمْ اٰمَنْتُمْ بِاللّٰهِ وَمَآ اَنْزَلْنَا عَلٰى عَبْدِنَا يَوْمَ الْفُرْقَانِ يَوْمَ الْتَقَى الْجَمْعٰنِ ۗ وَاللّٰهُ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ﴿٤١﴾

४२. तथा के ज्ञात राख भने तिमीहरूले (युद्धमा) प्राप्त गरेको धन-सम्पत्तिबाट अल्लाहलाई र सन्देशवाहकलाई तथा निकटसम्बन्धीलाई तथा टुहुराहरूलाई तथा अभाव ग्रस्तहरूलाई र पथिकहरूलाई पाँचौं भाग प्राप्त हुनेछ यदि तिमीहरू अल्लाहप्रति तथा त्यस कुराप्रति जुन कुरा हामीले त्यस विशिष्टताकरणका दिनमा आफ्ना भृत्यप्रति अवतीर्ण गरेका थियौं– जुन दिन दुई दलको मुठभेड भएको थियो– विश्वास गर्छौ भने, तथा सम्पूर्ण कार्यहरूप्रति अल्लाह सामर्थ्यवान् रहेका छन् ।

اِذْ اَنْتُمْ بِالْعُدْوَةِ الدُّنْيَا وَهُمْ بِالْعُدْوَةِ الْقُصْوٰى وَالرَّكْبُ اَسْفَلَ مِنْكُمْ ۗ وَلَوْ تَوَاعَدْتُّمْ لَاخْتَلَفْتُمْ فِي الْمِيْعٰدِ ۙ وَلٰكِنْ لِّيَقْضِيَ اللّٰهُ اَمْرًا كَانَ مَفْعُوْلًا ۙ لِّيَهْلِكَ مَنْ هَلَكَ عَنْۢ بَيِّنَةٍ وَّيَحْيٰى مَنْ حَيَّ عَنْۢ بَيِّنَةٍ ۗ وَاِنَّ اللّٰهَ لَسَمِيْعٌ عَلِيْمٌ ﴿٤٢﴾

४३. जब तिमीहरू (उपत्यकाको) निकटतम किनारामा थियौ, तथा तिनीहरू उपल्लो किनारामा थिए, र दल तिमीहरूभन्दा तल थियो । तथा यदि तिमीहरूले (दुबै युद्धप्रिय समूहले परस्पर) मुठभेडको समय निर्धारण गरेका भए तापनि (आफ्नो हितको अनुकूलतालाई लिएर निर्धारित) समयका सम्बन्धमा निश्चय नै, मतभेद गर्ने थियौ जुन कुराको निर्णय भइसकेको थियो त्यसको पूर्ण हुने (समय) अल्लाहले निर्धारण गर्छन् भन्ने कुरो निश्चित थियो । ताकि जुन व्यक्तिहरूको स्पष्ट तर्कद्वारा विनाश हुने निर्णय भएको छ तिनीहरूको विनाश होस् तथा जुन व्यक्तिहरू स्पष्ट तर्कको आधारमा जीवित रहन योग्य रहेका छन् तिनीहरू जीवित रहून् । तथा अल्लाह निस्सन्देह सर्वस्रोता सर्वज्ञ छन्

اِذْ يُرِيْكَهُمُ اللّٰهُ فِيْ مَنَامِكَ قَلِيْلًا ۗ وَلَوْ اَرٰىكَهُمْ كَثِيْرًا لَّفَشِلْتُمْ وَلَتَنَازَعْتُمْ فِي الْاَمْرِ وَلٰكِنَّ اللّٰهَ سَلَّمَ ۗ اِنَّهٗ عَلِيْمٌۢ بِذَاتِ الصُّدُوْرِ ﴿٤٣﴾

४४. जब अल्लाहले तिम्रो सपनामा तिमीलाई तिनीहरूको संख्या कम गरेर देखाए, तथा यदि उनले तिमीलाई तिनीहरूको संख्या बढाएर देखाएका भए निश्चय नै तिमीहरू लर्खराउने थियौ तथा त्यस विषयमा परस्पर मतभेद गर्ने थियौ, परन्तु अल्लाहले (तिमीहरूलाई) बचाए ।

अन्तकरणमा रहेका कुराहरूको पूर्ण ज्ञान रहेको छ ।

وَإِذْ يُرِيكُمُوهُمْ إِذِ الْتَقَيْتُمْ فِيٓ أَعْيُنِكُمْ قَلِيلًا وَيُقَلِّلُكُمْ فِيٓ أَعْيُنِهِمْ لِيَقْضِيَ اللّٰهُ أَمْرًا كَانَ مَفْعُولًا ۗ وَإِلَى اللّٰهِ تُرْجَعُ الْأُمُورُ ﴿٤٤﴾

४५. तथा जब तिमीहरूको मुठभेडका समयमा उनले तिनीहरूलाई तिमीहरूका दृष्टिमा कम गरेर देखाएका थिए तथा तिनीहरूका दृष्टिमा तिमीहरूलाई कम गरेर देखाएका थिए, ताकि जुन कुराको निर्णय भएको थियो, त्यसलाई अल्लाहले पूर्ण गरून् ।तथा सम्पूण मामिलाहरू (अन्तिम निर्णयका निम्ति) अल्लाहसमक्ष नै प्रस्तुत गरिन्छन् ।

يٰٓأَيُّهَا الَّذِينَ آمَنُوٓا إِذَا لَقِيتُمْ فِئَةً فَاثْبُتُوا وَاذْكُرُوا اللّٰهَ كَثِيرًا لَّعَلَّكُمْ تُفْلِحُونَ ﴿٤٥﴾

४६. हे विश्वासीजन हो ! जब कुनै शत्रुदलसँग तिमीहरूको मुठभेड हुन्छ, दृढ रहने गर, तथा अल्लाहलाई अत्याधिक स्मरण गर्ने गर ताकि तिमीहरू कृतार्थ हुन सक ।

وَأَطِيعُوا اللّٰهَ وَرَسُولَهُۥ وَلَا تَنَازَعُوا فَتَفْشَلُوا وَتَذْهَبَ رِيحُكُمْ ۖ وَاصْبِرُوٓا ۚ إِنَّ اللّٰهَ مَعَ الصّٰبِرِينَ ﴿٤٦﴾

४७. तथा अल्लाह र उनका सन्देशवाहकका आज्ञाकारी बन तथा परस्पर विवाद नगर, अन्यथा तिमीहरू कायर बन्नेछौ र (तिमीहरूको) शक्ति तिमीहरुबाट विलोप हुनेछ । तथा धैर्यधारण गर, अल्लाह निश्चय नै धैर्यधारीहरूका साथमा छन् ।

وَلَا تَكُونُوا كَالَّذِينَ خَرَجُوا مِن دِيٰرِهِم بَطَرًا وَرِئَآءَ النَّاسِ وَيَصُدُّونَ عَن سَبِيلِ اللّٰهِ ۚ وَاللّٰهُ بِمَا يَعْمَلُونَ مُحِيطٌ ﴿٤٧﴾

४८. तथा ती व्यक्तिहरूझैं नबन जुन व्यक्तिहरू (आफ्ना कार्यहरूको) बडाइँ गर्न र मानिसहरूलाई देखाउनका निम्ति आफ्ना घरबाट निस्किएका थिए, तथा तिनीहरूले (मानिसहरूलाई) अल्लाहका मार्गसम्म पुग्नबाट रोकेका थिए, तथा तिनीहरूका सबै कार्यहरूलाई अल्लाहले घेर्ने गर्छन् ।

وَإِذْ زَيَّنَ لَهُمُ الشَّيْطٰنُ أَعْمٰلَهُمْ وَقَالَ لَا غَالِبَ لَكُمُ الْيَوْمَ مِنَ النَّاسِ وَإِنِّي جَارٌ لَّكُمْ ۖ فَلَمَّا تَرَآءَتِ الْفِئَتَانِ نَكَصَ عَلٰى عَقِبَيْهِ وَقَالَ إِنِّي بَرِيٓءٌ مِّنكُمْ إِنِّيٓ أَرٰى مَا لَا تَرَوْنَ إِنِّيٓ أَخَافُ اللّٰهَ ۚ وَاللّٰهُ شَدِيدُ الْعِقَابِ ﴿٤٨﴾

४९. तथा जब सैतानले तिनीहरूका कार्यहरू तिनीहरूलाई सुन्दर तुल्याएर देखायो र भन्यो, "आज मानिसहरूमध्ये कोही पनि तिमीहरूमाथि विजयी हुनेछैन तथा म तिमीहरूको संरक्षक रहेको छु ।" परन्तु जब दुबै दल परस्पर आमुन्नेसामुन्ने भए उ

(त्यहाँबाट) कुर्कुच्चा टेकेर भाग्यो, तथा भन्यो, "निश्चय नै तिमीहरूसँग मेरो केही सरोकार रहेको छैन, म निश्चय नै त्यो कुरा देख्छु जुन कुरा तिमीहरू देख्दैनौ । निश्चय नै, म अल्लाहसित डराऊँछु । तथा दण्ड दिनमा अल्लाह कठोर रहेका छन् ।"

५०. जब ती ढोंगीहरू र रोगग्रस्त हृदय रहेका मानिसहरूले भने " यी मानिसहरूलाई तिनीहरूको धर्मले धोका दिएको छ । तथा जसले अल्लाहप्रति भरोसा राख्छ, तब निश्चय नै अल्लाह सर्वेसर्वा, तत्त्वज्ञ रहेका छन् ।

إِذْ يَقُولُ الْمُنَافِقُونَ وَالَّذِينَ فِي قُلُوبِهِم مَّرَضٌ غَرَّ هَٰؤُلَاءِ دِينُهُمْ ۗ وَمَن يَتَوَكَّلْ عَلَى اللَّهِ فَإِنَّ اللَّهَ عَزِيزٌ حَكِيمٌ ﴿٥٠﴾

५१. यदि तिमीले देख्न सक्ने भए, जब फरिस्ताहरूले ती अविश्वासीहरूका मुहार र पिठ्यूँमा हिर्काउँदै, "प्रज्वलित दण्ड चाख" (भन्दै) : तिनीहरूको प्राण लिन्छन् !

وَلَوْ تَرَىٰ إِذْ يَتَوَفَّى الَّذِينَ كَفَرُوا ۙ الْمَلَائِكَةُ يَضْرِبُونَ وُجُوهَهُمْ وَأَدْبَارَهُمْ وَذُوقُوا عَذَابَ الْحَرِيقِ ﴿٥١﴾

५२. "यो किन हो भने, तिमीहरूका हातले जुन कुरा (तिमीहरूभन्दा) अघि पठाएको छ, तथा अल्लाह आफ्ना सेवकहरूप्रति रतिभर अन्याय गर्दैनन् (भनी जान) ।"

ذَٰلِكَ بِمَا قَدَّمَتْ أَيْدِيكُمْ وَأَنَّ اللَّهَ لَيْسَ بِظَلَّامٍ لِّلْعَبِيدِ ﴿٥٢﴾

५३. (तिनीहरूको अवस्था) फिरौनका जातिका मानिसहरू तथा तिनीहरूभन्दा अघिका व्यक्तिहरूको अवस्थासदृश रहेको छ, तिनीहरू अल्लाहका चिह्नहरूप्रति अविश्वास गर्थे, त्यसकारण अल्लाहले तिनीहरूलाई तिनीहरूका पापका कारण दण्ड दिए । निश्चय नै अल्लाह प्रबल शक्तिशाली (तथा) दण्ड दिनमा कठोर रहेका छन् ।

كَدَأْبِ آلِ فِرْعَوْنَ ۙ وَالَّذِينَ مِن قَبْلِهِمْ ۚ كَفَرُوا بِآيَاتِ اللَّهِ فَأَخَذَهُمُ اللَّهُ بِذُنُوبِهِمْ ۗ إِنَّ اللَّهَ قَوِيٌّ شَدِيدُ الْعِقَابِ ﴿٥٣﴾

५४. यसको कारण के रहेको छ भने अल्लाहले कुनै जातिप्रति गरेको अनुग्रहलाई तबसम्म परिवर्तन गर्दैनन् जबसम्म तिनीहरूले स्वयम्ले आफ्नो अवस्था परिवर्तन गर्दैनन् तथा अल्लाह सर्वश्रोता,

ذَٰلِكَ بِأَنَّ اللَّهَ لَمْ يَكُ مُغَيِّرًا نِّعْمَةً أَنْعَمَهَا عَلَىٰ قَوْمٍ حَتَّىٰ يُغَيِّرُوا مَا بِأَنفُسِهِمْ ۙ وَأَنَّ اللَّهَ سَمِيعٌ عَلِيمٌ ﴿٥٤﴾

सर्वज्ञ छन् (भनी जान)।

كَدَأْبِ اٰلِ فِرْعَوْنَ ۙ وَالَّذِيْنَ مِنْ قَبْلِهِمْ ؕ كَذَّبُوْا بِاٰيٰتِ رَبِّهِمْ فَاَهْلَكْنٰهُمْ بِذُنُوْبِهِمْ وَاَغْرَقْنَآ اٰلَ فِرْعَوْنَ ۚ وَكُلٌّ كَانُوْا ظٰلِمِيْنَ ﴿٥٥﴾

५५. (तिनीहरूको अवस्था) फिरौनका (जातिका) मानिसहरू तथा तिनीहरूभन्दा अघिका मानिसहरूको अवस्थासदृश रहेको छ, तिनीहरूले आफ्ना प्रभुका चिह्नहरूलाई अस्वीकार गरेका थिए, त्यसकारण तिनीहरूका पापका कारण हामीले तिनीहरूलाई सखाप पाऱ्यौं । तथा हामीले फिरौनका मानिसहरूलाई डुबायौं, कारण तिनीहरू सबै अन्यायकारी थिए ।

اِنَّ شَرَّ الدَّوَآبِّ عِنْدَ اللّٰهِ الَّذِيْنَ كَفَرُوْا فَهُمْ لَا يُؤْمِنُوْنَ ﴿٥٦﴾

५६. निश्चय नै अल्लाहका दृष्टिमा सबैभन्दा निकृष्ट प्राणी ती व्यक्तिहरू रहेका छन्, जो अकृतज्ञ छन् । अतः तिनीहरूले विश्वास गर्नेछैनन् ।

اَلَّذِيْنَ عٰهَدْتَّ مِنْهُمْ ثُمَّ يَنْقُضُوْنَ عَهْدَهُمْ فِيْ كُلِّ مَرَّةٍ وَّهُمْ لَا يَتَّقُوْنَ ﴿٥٧﴾

५७. जुन व्यक्तिहरूसँग तिमीले प्रतिज्ञा लिएका थियौ, तिनीहरू त्यसपछि प्रत्येक बार आफ्नो प्रतिज्ञा तोड्छन् तथा तिनीहरू अल्लाहप्रति डराउँदैनन् ।

فَاِمَّا تَثْقَفَنَّهُمْ فِي الْحَرْبِ فَشَرِّدْ بِهِمْ مَّنْ خَلْفَهُمْ لَعَلَّهُمْ يَذَّكَّرُوْنَ ﴿٥٨﴾

५८. त्यसकारण, यदि तिमीले तिनीहरूलाई युद्धमा पक्ड्यौ भने तिनीहरूलाई (ध्वस्त पारी) तिनीहरूकापछि रहेका व्यक्तिहरूमा त्रास उत्पन्न गर, ताकि तिनीहरूले अर्ती लिन सकून् ।

وَاِمَّا تَخَافَنَّ مِنْ قَوْمٍ خِيَانَةً فَانْۢبِذْ اِلَيْهِمْ عَلٰى سَوَآءٍ ؕ اِنَّ اللّٰهَ لَا يُحِبُّ الْخَآئِنِيْنَ ﴿٥٩﴾

५९. तथा यदि तिमीलाई कुनै जातिद्वारा विश्वासघात हुने डर रहेमा, न्यायोचित ढंगले (तिनीहरूको प्रतिज्ञा) तिनीहरूलाई नै प्रत्यार्पण गरिदेऊ । निश्चय नै, अल्लाहले विश्वासघाती व्यक्तिहरूलाई मन पराउँदैनन्

وَلَا يَحْسَبَنَّ الَّذِيْنَ كَفَرُوْا سَبَقُوْا ؕ اِنَّهُمْ لَا يُعْجِزُوْنَ ﴿٦٠﴾

६०. तथा (हामीलाई) मात दिएका छौं भनी अविश्वासीहरूले नठानून् । निश्चय नै, तिनीहरूले (अल्लाहको उद्देश्यलाई) व्यर्थ तुल्याउन सक्दैनन् ।

وَأَعِدُّوا لَهُم مَّا اسْتَطَعْتُم مِّن قُوَّةٍ وَّمِن رِّبَاطِ الْخَيْلِ تُرْهِبُونَ بِهِ عَدُوَّ اللَّهِ وَعَدُوَّكُمْ وَآخَرِينَ مِن دُونِهِمْ لَا تَعْلَمُونَهُمُ اللَّهُ يَعْلَمُهُمْ ۚ وَمَا تُنفِقُوا مِن شَيْءٍ فِي سَبِيلِ اللَّهِ يُوَفَّ إِلَيْكُمْ وَأَنتُمْ لَا تُظْلَمُونَ ﴿٦١﴾

६१. तथा तिनीहरूका विरुद्ध यथासम्भव (सशस्त्र) सेना तयार राख तथा सीमाक्षेत्रमा खडा गरिएका छाउनीहरूद्वारा, जहाँबाट तिमीहरू अल्लाहका शत्रुहरू र आफ्ना शत्रुहरू तथा तिनीहरूबाहेक अन्यलाई, जसलाई तिमीहरू चिन्दैनौ, (परन्तु) अल्लाहले चिन्दछन्, डराऊन सक्छौ । जेजति वस्तु तिमीहरू अल्लाहका मार्गमा खर्च गर्छौ त्यो तिमीहरूलाई पूर्णरूपमा प्रत्यार्पण गरिनेछ र तिमीहरूप्रति अन्याय गरिनेछैन ।

وَإِن جَنَحُوا لِلسَّلْمِ فَاجْنَحْ لَهَا وَتَوَكَّلْ عَلَى اللَّهِ ۚ إِنَّهُ هُوَ السَّمِيعُ الْعَلِيمُ ﴿٦٢﴾

६२. तथा यदि तिनीहरू सन्धितर्फ झुके भने तिमी पनि त्यसतर्फ झुक, तथा अल्लाहप्रति भरोसा राख । निश्चय नै उनी सर्वश्रोता, सर्वज्ञ रहेका छन् ।

وَإِن يُرِيدُوا أَن يَخْدَعُوكَ فَإِنَّ حَسْبَكَ اللَّهُ ۚ هُوَ الَّذِي أَيَّدَكَ بِنَصْرِهِ وَبِالْمُؤْمِنِينَ ﴿٦٣﴾

६३. तथा यदि तिनीहरूले तिमीलाई धोका दिन चाहेमा, तिम्रा निम्ति अल्लाह नै अवश्य पर्याप्त रहेका छन् । उनी नै हुन् जसले तिमीलाई आफ्नो सहयोगद्वारा र विश्वासीहरूद्वारा सुदृढ तुल्याएका छन् ।

وَأَلَّفَ بَيْنَ قُلُوبِهِمْ ۚ لَوْ أَنفَقْتَ مَا فِي الْأَرْضِ جَمِيعًا مَّا أَلَّفْتَ بَيْنَ قُلُوبِهِمْ وَلَٰكِنَّ اللَّهَ أَلَّفَ بَيْنَهُمْ ۚ إِنَّهُ عَزِيزٌ حَكِيمٌ ﴿٦٤﴾

६४. तथा उनले तिनीहरूका हृदयबीचमा प्रेम उत्पन्न गरिदिएका छन् । यदि तिमीले पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरू खर्चेका भए तापनि तिमीले तिनीहरूका हृदय बीचमा प्रेम उत्पन्न गर्न सक्ने थिएनौ, परन्तु अल्लाहले तिनीहरूका बीचमा प्रेम उत्पन्न गरे । निश्चय नै उनी सर्वशक्तिमान, तत्त्वज्ञ रहेका छन् ।

يَا أَيُّهَا النَّبِيُّ حَسْبُكَ اللَّهُ وَمَنِ اتَّبَعَكَ مِنَ الْمُؤْمِنِينَ ﴿٦٥﴾

६५. हे नबी, तिम्रा निम्ति तथा तिम्रा अनुयायी विश्वासीजनका निम्ति अल्लाह नै पर्याप्त रहेका छन् ।

يَا أَيُّهَا النَّبِيُّ حَرِّضِ الْمُؤْمِنِينَ عَلَى الْقِتَالِ ۚ إِن يَكُن مِّنكُمْ عِشْرُونَ صَابِرُونَ يَغْلِبُوا مِائَتَيْنِ ۚ وَإِن

६६. हे नबी, विश्वासीहरूलाई युद्ध गर्न प्रेरित गर । यदि तिमीहरूमध्ये बीसजना धैर्यधारी व्यक्तिहरू रहेमा, तिनीहरू दुईसय जनामाथि विजयी हुनेछन्, तथा यदि

يَّكُنْ مِّنْكُمْ مِّائَةٌ يَّغْلِبُوْٓا اَلْفًا مِّنَ الَّذِيْنَ كَفَرُوْا بِاَنَّهُمْ قَوْمٌ لَّا يَفْقَهُوْنَ ﴿٦٦﴾

तिमीहरूमध्ये सयजना रहेमा, तिनीहरू एकहजार जना अविश्वासी व्यक्तिहरूमाथि विजयी हुनेछन्, कारण तिनीहरू यस्ता व्यक्तिहरू हुन् जसले बुझ्दैनन् ।

اَلْئٰنَ خَفَّفَ اللّٰهُ عَنْكُمْ وَ عَلِمَ اَنَّ فِيْكُمْ ضَعْفًا ؕ فَاِنْ يَّكُنْ مِّنْكُمْ مِّائَةٌ صَابِرَةٌ يَّغْلِبُوْا مِائَتَيْنِ ۚ وَ اِنْ يَّكُنْ مِّنْكُمْ اَلْفٌ يَّغْلِبُوْٓا اَلْفَيْنِ بِاِذْنِ اللّٰهِ ؕ وَاللّٰهُ مَعَ الصّٰبِرِيْنَ ﴿٦٧﴾

६७. अहिलेलाई अल्लाहले तिमीहरूको बोझ हलुका गरिदिएका छन्, कारण तिमीहरूमा दुर्वलता रहेको छ भनी उनलाई थाहा छ । अत: यदि तिमीहरूमध्ये सयजना धैर्यधारी व्यक्तिहरू रहेमा, तिनीहरू दुईसय व्यक्तिहरूमाथि विजयी हुनेछन्; तथा यदि तिमीहरूमध्ये एकहजार जना रहेमा, तिनीहरू अल्लाहको आदेशद्वारा दुईहजार व्यक्तिहरूमाथि विजयी हुनेछन् । तथा अल्लाह धैर्यधारी व्यक्तिहरूका साथमा रहेका छन् ।

مَا كَانَ لِنَبِيٍّ اَنْ يَّكُوْنَ لَهٗٓ اَسْرٰى حَتّٰى يُثْخِنَ فِى الْاَرْضِ ؕ تُرِيْدُوْنَ عَرَضَ الدُّنْيَا ۖ وَاللّٰهُ يُرِيْدُ الْاٰخِرَةَ ؕ وَاللّٰهُ عَزِيْزٌ حَكِيْمٌ ﴿٦٨﴾

६८. कुनै नबीका निम्ति कसैलाई बन्दी बनाउनु तबसम्म उपयुक्त हुनेछैन जबसम्म उनी देशमा हुने नियमित युद्धमा व्यस्त हुँदैनन् । तिमीहरू साँसारिक वैभवको चाहना गर्छौ, अल्लाह भने (तिमीहरूका निम्ति) परलोकको चाहना राख्छन् । तथा अल्लाह सर्वशक्तिमान, तत्त्वज्ञ छन् ।

لَوْ لَا كِتٰبٌ مِّنَ اللّٰهِ سَبَقَ لَمَسَّكُمْ فِيْمَآ اَخَذْتُمْ عَذَابٌ عَظِيْمٌ ﴿٦٩﴾

६९. अल्लाहका तर्फबाट एउटा स्पष्ट आदेश जारी भइनसकेको भए जुन कुरा तिमीहरूले ग्रहण गरेका थियौ (त्यसका कारण) तिमीहरूमाथि एउटा ठूलो विपत्ति आइलाग्ने थियो ।

فَكُلُوْا مِمَّا غَنِمْتُمْ حَلٰلًا طَيِّبًا ۖ وَّاتَّقُوا اللّٰهَ ؕ اِنَّ اللّٰهَ غَفُوْرٌ رَّحِيْمٌ ﴿٧٠﴾ ع

७०. अत: जुन कुरा (युद्धमा) तिमीहरूले जितेका छौ त्यसबाट वैध र उत्तम (वस्तुहरू) खाऊ, तथा अल्लाहसँग डराऊ । निश्चय नै अल्लाह परम क्षमाशील, परम करुणाशील छन् ।

يٰٓاَيُّهَا النَّبِيُّ قُلْ لِّمَنْ فِيْٓ اَيْدِيْكُمْ

७१. हे नबी, तिम्रा हातमा रहेका

مِّنَ الْأَسْرَىٰ إِن يَعْلَمِ اللَّهُ فِي قُلُوبِكُمْ خَيْرًا يُؤْتِكُمْ خَيْرًا مِّمَّا أُخِذَ مِنكُمْ وَيَغْفِرْ لَكُمْ ۗ وَاللَّهُ غَفُورٌ رَّحِيمٌ ﴿٧٠﴾

बन्दीहरूलाई भन, 'यदि अल्लाहलाई तिमीहरूका हृदयमा कुनै पूण्य रहेको छ भन्ने ज्ञात भएमा, जुन कुरा तिमीहरूबाट लिइएको छ त्योभन्दा उत्तम कुरा तिमीहरूलाई उनले प्रदान गर्नेछन्, तथा तिमीहरूलाई क्षमा प्रदान गर्नेछन् । तथा अल्लाह परम क्षमाशील, परम करुणाशील छन् ।

وَإِن يُرِيدُوا خِيَانَتَكَ فَقَدْ خَانُوا اللَّهَ مِن قَبْلُ فَأَمْكَنَ مِنْهُمْ ۗ وَاللَّهُ عَلِيمٌ حَكِيمٌ ﴿٧١﴾

७२. तथा यदि तिनीहरूले तिमीसँग विश्वासघात गर्न चाहे भने, यसअघि तिनीहरूले अल्लाहसँग विश्वासघात गरिसकेका छन्, अतः उनले तिनीहरूलाई शक्तिहीन तुल्याएर छाडे । तथा अल्लाह सर्वज्ञ, तत्त्वज्ञ छन् ।

إِنَّ الَّذِينَ آمَنُوا وَهَاجَرُوا وَجَاهَدُوا بِأَمْوَالِهِمْ وَأَنفُسِهِمْ فِي سَبِيلِ اللَّهِ وَالَّذِينَ آوَوا وَّنَصَرُوا أُولَٰئِكَ بَعْضُهُمْ أَوْلِيَاءُ بَعْضٍ ۚ وَالَّذِينَ آمَنُوا وَلَمْ يُهَاجِرُوا مَا لَكُم مِّن وَلَايَتِهِم مِّن شَيْءٍ حَتَّىٰ يُهَاجِرُوا ۚ وَإِنِ اسْتَنصَرُوكُمْ فِي الدِّينِ فَعَلَيْكُمُ النَّصْرُ إِلَّا عَلَىٰ قَوْمٍ بَيْنَكُمْ وَبَيْنَهُم مِّيثَاقٌ ۗ وَاللَّهُ بِمَا تَعْمَلُونَ بَصِيرٌ ﴿٧٢﴾

७३. निश्चय नै, ती व्यक्तिहरू जसले विश्वास (स्थापना) गरेका छन् तथा आफ्ना घरबार त्यागेका छन् तथा आफ्नो सम्पत्ति र ज्यूज्यानकासाथ अल्लाहका मार्गमा संघर्ष गरेका छन्, तथा ती व्यक्तिहरू जसले (तिनीहरूलाई) आश्रय दिएका छन् र सहयोग गरेका छन्- तिनीहरू निस्सन्देह परस्पर एक अर्काका मित्र रहेका छन् । परन्तु ती व्यक्तिहरू जसले विश्वास त स्थापना गरेका छन्, तर आफ्नो घर त्यागेका छैनन्, जबसम्म तिनीहरूले आफ्ना घर त्याग्दैनन्, तिमीहरूमाथि तिनीहरूको संरक्षणको कुनै जिम्मेवारी रहेको छैन । परन्तु यदि तिनीहरू धर्मका (मामिलामा) तिमीहरूको सहयोग चाहन्छन् भने तिनीहरूको सहयोग गर्नु तिमीहरूको कर्तव्य रहेको छ । सिवाय त्यो जाति जसको र तिमीहरूबीच सन्धि रहेको छ । तथा जुन कार्य तिमीहरू गर्छौ त्यसलाई अल्लाहले देखिरहेछन् ।

وَالَّذِينَ كَفَرُوا بَعْضُهُمْ أَوْلِيَاءُ بَعْضٍ ۚ إِلَّا تَفْعَلُوهُ تَكُن فِتْنَةٌ فِي الْأَرْضِ وَفَسَادٌ كَبِيرٌ ﴿٧٣﴾

७४. तथा ती व्यक्तिहरू जसले अविश्वास गर्छन्- तिनीहरू एकअर्काका मित्र रहेका छन् । यदि तिमीहरूले त्यो गरेनौ भने, देशमा ठूलो अनिष्ट र अशान्ति उत्पन्न हुनेछ ।

وَالَّذِينَ آمَنُوا وَهَاجَرُوا وَجَاهَدُوا فِي سَبِيلِ اللَّهِ وَالَّذِينَ آوَوا وَّنَصَرُوا أُولَٰئِكَ هُمُ الْمُؤْمِنُونَ حَقًّا لَّهُم مَّغْفِرَةٌ وَرِزْقٌ كَرِيمٌ ﴿٧٥﴾

७५. तथा ती व्यक्तिहरू जसले विश्वास स्थापना गरेका छन् तथा आफ्ना घर परित्याग गरेका छन् र अल्लाहका मार्गमा संघर्ष गरेका छन्, तथा ती व्यक्तिहरू जसले (तिनीहरूलाई) आश्रय तथा सहयोग दिएका छन्– यिनीहरू निःसन्देह साँचा विश्वासी हुन् । तिनीहरूका निम्ति क्षमादान तथा सम्मानित जीवनवृत्ति रहेको छ ।

وَالَّذِينَ آمَنُوا مِن بَعْدُ وَهَاجَرُوا وَجَاهَدُوا مَعَكُمْ فَأُولَٰئِكَ مِنكُمْ وَأُولُو الْأَرْحَامِ بَعْضُهُمْ أَوْلَىٰ بِبَعْضٍ فِي كِتَابِ اللَّهِ إِنَّ اللَّهَ بِكُلِّ شَيْءٍ عَلِيمٌ ﴿٧٦﴾

७६. तथा ती व्यक्तिहरू जसले त्यसपछि विश्वास स्थापना गरेका छन् र आफ्ना घर परित्याग गरेका छन् तथा तिमीहरूसँग मिलेर (अल्लाहका मार्गमा) संघर्ष गरेका छन्- तिनीहरू तिमीहरूमध्येकै रहेका छन्; तथा रक्त नाताका सम्बन्धमा भने अल्लाहको पुस्तकमा तिनीहरूमध्ये केही एक आपसमा अधिक निकट रहेका छन् । निश्चय नै, अल्लाहलाई सबै कुरा राम्रो थाहा छ ।

سُورَةُ التَّوْبَةِ مَدَنِيَّةٌ وَّهِيَ مِائَةٌ وَّتِسْعٌ وَّعِشْرُونَ آيَةً وَّسِتَّةَ عَشَرَ رُكُوعًا

## अल्-तौबा

(हिजरतपछि अवतरित)

بَرَآءَةٌ مِّنَ اللّٰهِ وَرَسُوْلِهٖٓ اِلَى الَّذِيْنَ عَاهَدْتُّمْ مِّنَ الْمُشْرِكِيْنَ ۝١

१. अल्लाह र उनका सन्देशवाहकका तर्फबाट (पूर्ण) उन्मुक्तिको (यो) एउटा घोषणा हो ती मूर्तिपूजकहरुको (सम्पूर्ण जिम्मेवारीबाट) जससित तिमीहरुले प्रतिज्ञा गरेका थियौ ।

فَسِيْحُوْا فِى الْاَرْضِ اَرْبَعَةَ اَشْهُرٍ وَّاعْلَمُوْٓا اَنَّكُمْ غَيْرُ مُعْجِزِى اللّٰهِ ۙ وَاَنَّ اللّٰهَ مُخْزِى الْكٰفِرِيْنَ ۝٢

२. अतः चार महिनासम्म देशको परिभ्रमण गरेर हेर, तथा अल्लाहको (योजनालाई) तिमीहरूले व्यर्थ तुल्याउन सक्दैनौ तथा अल्लाहले अविश्वासीहरूलाई अपमानित गर्नेछन् भनी जान ।

وَاَذَانٌ مِّنَ اللّٰهِ وَرَسُوْلِهٖٓ اِلَى النَّاسِ يَوْمَ الْحَجِّ الْاَكْبَرِ اَنَّ اللّٰهَ بَرِيْٓءٌ مِّنَ الْمُشْرِكِيْنَ ۙ وَرَسُوْلُهٗ ۗ فَاِنْ تُبْتُمْ فَهُوَ خَيْرٌ لَّكُمْ ۚ وَاِنْ تَوَلَّيْتُمْ فَاعْلَمُوْٓا اَنَّكُمْ غَيْرُ مُعْجِزِى اللّٰهِ ۗ وَبَشِّرِ الَّذِيْنَ كَفَرُوْا بِعَذَابٍ اَلِيْمٍ ۝٣

३. तथा अल्लाह र उनका सन्देशवाहकका तर्फबाट मानिसहरूसमक्ष महानतम् हज्का (तीर्थयात्राका) दिन अल्लाह तथा यसै प्रकार उनका सन्देशवाहक मूर्तिपूजकहरू-बाट मुक्त रहेका छन् भनी (यो) एउटा घोषणा (हो) । अतः यदि तिमीहरूले प्रायश्चित गरेमा त्यो तिमीहरूका निम्ति उत्तम हुनेछ; परन्तु यदि तिमीहरू विमुख भयौ भने, तिमीहरूले अल्लाह (को योजनालाई) व्यर्थ तुल्याउन सक्नेछैनौ भनी जान । तथा अविश्वासी व्यक्तिहरूलाई पीडादायक दण्डको सन्देश देऊ,

اِلَّا الَّذِيْنَ عَاهَدْتُّمْ مِّنَ الْمُشْرِكِيْنَ ثُمَّ لَمْ يَنْقُصُوْكُمْ شَيْـًٔا وَّلَمْ يُظَاهِرُوْا عَلَيْكُمْ اَحَدًا فَاَتِمُّوْٓا اِلَيْهِمْ عَهْدَهُمْ اِلٰى مُدَّتِهِمْ ۗ اِنَّ اللّٰهَ يُحِبُّ الْمُتَّقِيْنَ ۝٤

४. मूर्तिपूजकहरूमध्ये ती व्यक्तिहरूबाहेक जससँग तिमीहरूले सन्धि गरिसकेका छौ, र तिनीहरूले तिमीहरूप्रतिको आफ्नो दायित्व पूर्ण गर्ने सम्बन्धमा कुनै प्रकारको कमी गरेका छैनन् न त तिमीहरूविरुद्ध कसैलाई सहयोग गरेको छन् । त्यसकारण तिनीहरूसँग तिमीहरूले गरेका सन्धिलाई निर्धारित म्यादसम्म पूरा गर । निश्चय नै, अल्लाहले सत्यनिष्ठ व्यक्तिहरूलाई मन

पराउँछन् ।

५. तथा जब ती पवित्र घोषित महिनाहरू समाप्त हुन्छन्, (ती सन्धिभङ्ग गर्ने) मूर्तिपूजकहरूलाई तिमीहरूले जहाँ-जहाँ पाउँछौ (त्यही) तिनीहरूको हत्या गर तथा तिनीहरूलाई बन्दी बनाऊ तथा तिनीहरूलाई घेर र सबै लुक्ने स्थान्मा तिनीहरूका निम्ति घात लागएर बस । परन्तु यदि तिनीहरूले प्रायश्चित गरे तथा नमाज अनुष्ठान गरे र जगात चुक्ता गरे भने, तिनीहरूको मार्ग (खुल्ला) छाड । निश्चय नै अल्लाह परम क्षमाशील, परम दानशील रहेका छन् ।

فَإِذَا انْسَلَخَ الْأَشْهُرُ الْحُرُمُ فَاقْتُلُوا الْمُشْرِكِينَ حَيْثُ وَجَدْتُمُوهُمْ وَخُذُوهُمْ وَاحْصُرُوهُمْ وَاقْعُدُوا لَهُمْ كُلَّ مَرْصَدٍ ۚ فَإِنْ تَابُوا وَأَقَامُوا الصَّلَوٰةَ وَآتَوُا الزَّكَوٰةَ فَخَلُّوا سَبِيلَهُمْ ۚ إِنَّ اللَّهَ غَفُورٌ رَحِيمٌ ۝٥

६. तथा यदि कुनै मूर्तिपूजकले तिम्रो आश्रय चाहेमा, त्यसलाई आश्रय प्रदान गर जसबाट उसले अल्लाहको वाणी सुन्न सकोस्; त्यसपछि उसलाई आफ्नो सुरक्षित स्थानसम्म पुऱ्याइदेउ । कारण के हो भने तिनीहरू यस्ता व्यक्तिहरू हुन् जसमा ज्ञान छैन ।

وَإِنْ أَحَدٌ مِنَ الْمُشْرِكِينَ اسْتَجَارَكَ فَأَجِرْهُ حَتَّىٰ يَسْمَعَ كَلَامَ اللَّهِ ثُمَّ أَبْلِغْهُ مَأْمَنَهُ ۚ ذَٰلِكَ بِأَنَّهُمْ قَوْمٌ لَا يَعْلَمُونَ ۝٦

ع

७. जुन व्यक्तिहरूसँग तिमीहरूले पवित्र मस्जिदमा सन्धि गरेका थियौ तिनीहरूबाहेक (ती) मूर्तिपूजकहरूको अल्लाह र उनका सन्देशवाहकसँग कसरी सन्धि हुन सक्छ र? अतः जबसम्म तिनीहरू तिमीहरूसँगको (अङ्गीकारप्रति) वचनबद्ध रहन्छन् (तबसम्म) तिमीहरू पनि तिनीहरूप्रति वचनबद्ध रहने गर । निश्चय नै, अल्लाहले सत्यनिष्ठ व्यक्तिहरूलाई मन पराउँछन् ।

كَيْفَ يَكُونُ لِلْمُشْرِكِينَ عَهْدٌ عِنْدَ اللَّهِ وَعِنْدَ رَسُولِهِ إِلَّا الَّذِينَ عَاهَدْتُمْ عِنْدَ الْمَسْجِدِ الْحَرَامِ ۖ فَمَا اسْتَقَامُوا لَكُمْ فَاسْتَقِيمُوا لَهُمْ ۚ إِنَّ اللَّهَ يُحِبُّ الْمُتَّقِينَ ۝٧

८. यदि तिनीहरू तिमीहरूमाथि विजयी भएमा, तिनीहरूले तिमीहरूसँग कुनै प्रकारको नातेदारी अथवा अङ्गीकारको मर्यादा राख्नेछैनन् भने (यो कसरी हुनसक्छ र?) तिनीहरू आफ्ना मुखले त

كَيْفَ وَإِنْ يَظْهَرُوا عَلَيْكُمْ لَا يَرْقُبُوا فِيكُمْ إِلًّا وَلَا ذِمَّةً ۚ يُرْضُونَكُمْ بِأَفْوَاهِهِمْ وَتَأْبَىٰ قُلُوبُهُمْ وَأَكْثَرُهُمْ فَاسِقُونَ ۝٨

तिमीहरूलाई प्रसन्न राख्न चाहन्छन्, परन्तु तिनीहरूका हृदयले (भने यसलाई) अस्वीकार गर्छ, तथा तिनीहरूमध्ये धेरैजसो विश्वासघाती रहेका छन् ।

اِشْتَرَوْا بِاٰيٰتِ اللّٰهِ ثَمَنًا قَلِيْلًا فَصَدُّوْا عَنْ سَبِيْلِهٖ ؕ اِنَّهُمْ سَآءَ مَا كَانُوْا يَعْمَلُوْنَ ۝٩

९. अल्लाहका चिह्नहरूका सट्टामा तिनीहरू तुच्छ मूल्य लिने गर्छन् तथा उनका मार्गबाट (मानिसहरूलाई) विमुख तुल्याउँछन् जुन कार्य तिनीहरू गर्छन् त्यो निःस्सन्देह अति नराम्रो रहेको छ ।

لَا يَرْقُبُوْنَ فِيْ مُؤْمِنٍ اِلًّا وَّ لَا ذِمَّةً ؕ وَ اُولٰٓئِكَ هُمُ الْمُعْتَدُوْنَ ۝١٠

१०. जसले (तिनीहरूप्रति) भरोसा गर्छन् तिनीहरूले उनीहरूको कुनै नातेदारी अथवा अङ्गीकारको मर्यादा राख्दैनन् । तथा तिनीहरू नै सीमोल्लङ्घनकारी हुन् ।

فَاِنْ تَابُوْا وَ اَقَامُوا الصَّلٰوةَ وَ اٰتَوُا الزَّكٰوةَ فَاِخْوَانُكُمْ فِي الدِّيْنِ ؕ وَ نُفَصِّلُ الْاٰيٰتِ لِقَوْمٍ يَّعْلَمُوْنَ ۝١١

११. परन्तु यदि तिनीहरूले प्रायश्चित्त गरेमा तथा नमाज अनुष्ठान गरेमा र जगात चुक्ता गरेमा तिनीहरू तिमीहरूका धार्मिक भाई-बन्धु हुन् । तथा हामी ज्ञानवान व्यक्तिहरूका निम्ति चिह्नहरूको व्याख्या गर्ने गर्छौं ।

وَ اِنْ نَّكَثُوْۤا اَيْمَانَهُمْ مِّنْۢ بَعْدِ عَهْدِهِمْ وَ طَعَنُوْا فِيْ دِيْنِكُمْ فَقَاتِلُوْۤا اَئِمَّةَ الْكُفْرِ ۙ اِنَّهُمْ لَاۤ اَيْمَانَ لَهُمْ لَعَلَّهُمْ يَنْتَهُوْنَ ۝١٢

१२. तथा यदि तिनीहरूले आफ्नो अङ्गीकरणपश्चात् आफ्ना शपथहरू तोडेमा र तिमीहरूको धर्मको निन्दा गरेमा (ती) अविश्वासीहरूका नेताहरूसँग युद्ध गर– निश्चय नै, तिनीहरूलाई आफ्ना शपथको कुनै पर्वाह छैन ताकि तिनीहरू विरत रहुन् ।

اَلَا تُقَاتِلُوْنَ قَوْمًا نَّكَثُوْۤا اَيْمَانَهُمْ وَ هَمُّوْا بِاِخْرَاجِ الرَّسُوْلِ وَ هُمْ بَدَءُوْكُمْ اَوَّلَ مَرَّةٍ ؕ اَتَخْشَوْنَهُمْ ۚ فَاللّٰهُ اَحَقُّ اَنْ تَخْشَوْهُ اِنْ كُنْتُمْ مُّؤْمِنِيْنَ ۝١٣

१३. के तिमीहरू ती व्यक्तिहरूसँग लड्दैनौ जसले आफ्ना शपथहरु तोडे तथा जसले सन्देशवाहकलाई निस्कासित गर्न षडयन्त्र रचे, तथा तिनीहरूले नै तिमीहरूविरुद्ध सर्वप्रथम (युद्ध) आरम्भ गरे? के तिमीहरू तिनीहरूसँग डराउँछौ? होइन, यदि तिमीहरू विश्वासी हौ भने अल्लाहप्रति

डराऊ किनभने उनी नै यसका अधिक हकदार रहेका छन् ।

قَاتِلُوْهُمْ يُعَذِّبْهُمُ اللّٰهُ بِاَيْدِيْكُمْ وَ يُخْزِهِمْ وَ يَنْصُرْكُمْ عَلَيْهِمْ وَيَشْفِ صُدُوْرَ قَوْمٍ مُّؤْمِنِيْنَ ﴿١٤﴾

१४. तिनीहरूसँग लडाइँ गर, ताकि अल्लाहले तिमीहरूका हातद्वारा तिनीहरूलाई दण्ड दिलाउन् । तथा तिनीहरूलाई अपमानित तुल्याउन तथा तिनीहरू विरुद्ध विजयका निम्ति) तिमीहरूलाई मद्दत गरून्, तथा विश्वासी व्यक्तिहरूका मनलाई सान्त्वना प्रदान गरून् ।

وَ يُذْهِبْ غَيْظَ قُلُوْبِهِمْ ، وَ يَتُوْبُ اللّٰهُ عَلٰى مَنْ يَّشَآءُ ، وَ اللّٰهُ عَلِيْمٌ حَكِيْمٌ ﴿١٥﴾

१५. तथा उनले तिनीहरूका हृदयको क्रोधलाई निवारण गर्नेछन् । तथा अल्लाह जसप्रति इच्छा गर्छन् त्यसतर्फ कृपादृष्टि गर्छन् । तथा अल्लाह सर्वज्ञ, तत्त्वज्ञ छन् ।

اَمْ حَسِبْتُمْ اَنْ تُتْرَكُوْا وَلَمَّا يَعْلَمِ اللّٰهُ الَّذِيْنَ جَاهَدُوْا مِنْكُمْ وَ لَمْ يَتَّخِذُوْا مِنْ دُوْنِ اللّٰهِ وَلَا رَسُوْلِهٖ وَ لَا الْمُؤْمِنِيْنَ وَلِيْجَةً ، وَ اللّٰهُ خَبِيْرٌۢ بِمَا تَعْمَلُوْنَ ﴿١٦﴾ ع ٨

१६. के त्यसै तिमीहरूलाई एक्लै छाडिनेछ भनी तिमीहरू ठान्छौ? वस्तुतः तिमीहरूमध्ये ती व्यक्तिहरूलाई जसले (अल्लाहका मार्गमा) संघर्ष गर्छन् तथा अल्लाह र उनका सन्देशवाहक तथा विश्वासीहरूबाहेक (अन्य कसैलाई) अन्तरङ्ग मित्रस्वरूप ग्रहण गर्दैनन् तिनीहरूलाई अल्लाहले हालसम्म प्रकट गरेका छैनन्? अल्लाह तिमीहरूका कार्यकलाप प्रति पूर्णविदित छन् ।

مَا كَانَ لِلْمُشْرِكِيْنَ اَنْ يَّعْمُرُوْا مَسٰجِدَ اللّٰهِ شٰهِدِيْنَ عَلٰٓى اَنْفُسِهِمْ بِالْكُفْرِ ، اُولٰٓئِكَ حَبِطَتْ اَعْمَالُهُمْ ۚ وَ فِى النَّارِ هُمْ خٰلِدُوْنَ ﴿١٧﴾

१७. जुन उद्देश्यहरूलाई लिएर अल्लाहका निम्ति मस्जिदहरूको निर्माण भएको छ तिनीहरूलाई पूर्ण गर्नु र तिनीहरूको यथोचित देखरेख गर्नु मूर्तिपुजकहरूका निम्ति सम्भव छैन किनभने तिनीहरू आफ्नै अविश्वासको स्वयम् साक्षी दिइरहेछन् । तिनीहरू नै हुन् जसका कार्यहरू व्यर्थ जानेछन् तथा तिनीहरू अग्निमा बसोबास गर्नेछन् ।

اِنَّمَا يَعْمُرُ مَسٰجِدَ اللّٰهِ مَنْ اٰمَنَ

१८. निश्चय नै, अल्लाहका मस्जिदहरूको देखरेख गर्न योग्य ता केवल त्यो व्यक्ति

بِاللّٰهِ وَالْيَوْمِ الْاٰخِرِ وَاَقَامَ
الصَّلٰوةَ وَاٰتَى الزَّكٰوةَ وَلَمْ يَخْشَ
اِلَّا اللّٰهَ فَعَسٰٓى اُولٰٓئِكَ اَنْ يَّكُوْنُوْا
مِنَ الْمُهْتَدِيْنَ ﴿١٨﴾

रहेको छ जसले अल्लाहप्रति तथा अन्तिम दिनप्रति विश्वास गर्छ, तथा नमाज अनुष्ठान गर्छ र जगात चुक्ता गर्छ, तथा अल्लाहबाहेक कसैसित डराउँदैन । अतः यिनीहरू नै सन्मार्ग प्राप्त व्यक्तिहरूमा (गणना गर्न योग्य) रहेका छन् ।

اَجَعَلْتُمْ سِقَايَةَ الْحَآجِّ وَعِمَارَةَ
الْمَسْجِدِ الْحَرَامِ كَمَنْ اٰمَنَ بِاللّٰهِ وَ
الْيَوْمِ الْاٰخِرِ وَجٰهَدَ فِيْ سَبِيْلِ
اللّٰهِ ۭ لَا يَسْتَوٗنَ عِنْدَ اللّٰهِ ۭ وَاللّٰهُ لَا
يَهْدِي الْقَوْمَ الظّٰلِمِيْنَ ﴿١٩﴾

१९. के तिमीहरूले हाजीहरूलाई पानी पियाउने र पवित्र मस्जिदलाई सम्भार गर्ने कार्यलाई त्यस व्यक्तिका (कार्यहरू समान) ठानेका छौ जसले अल्लाहप्रति र अन्तिम दिन प्रति विश्वास गर्छ तथा अल्लाहका मार्गमा संघर्ष गर्छ? अल्लाहका दृष्टिमा तिनीहरू (कदापि) बराबर हुन सक्दैनन् । तथा अल्लाहले अन्यायी व्यक्तिहरूलाई मार्ग प्रदर्शन गर्दैनन् ।

اَلَّذِيْنَ اٰمَنُوْا وَهَاجَرُوْا وَ
جٰهَدُوْا فِيْ سَبِيْلِ اللّٰهِ بِاَمْوَالِهِمْ
وَاَنْفُسِهِمْ ۙ اَعْظَمُ دَرَجَةً عِنْدَ اللّٰهِ ۭ
وَاُولٰٓئِكَ هُمُ الْفَآئِزُوْنَ ﴿٢٠﴾

२०. ती व्यक्तिहरू जसले विश्वास गर्छन् तथा (अल्लाहका निम्ति आफ्ना घरबाट) आप्रवास अवलम्बन गर्छन् तथा अल्लाहका मार्गमा आफ्ना धन तथा आफ्ना ज्यानका साथ संघर्ष गर्छन् अल्लाहका दृष्टिमा तिनीहरूको उच्चतम दर्जा रहेको छ । तथा यिनीहरू नै विजयी हुनेछन् ।

يُبَشِّرُهُمْ رَبُّهُمْ بِرَحْمَةٍ مِّنْهُ وَ
رِضْوَانٍ وَّجَنّٰتٍ لَّهُمْ فِيْهَا نَعِيْمٌ
مُّقِيْمٌ ﴿٢١﴾

२१. तिनीहरूका प्रभुले तिनीहरूलाई आफ्नो तर्फबाट करुणा तथा आफ्नो प्रसन्नता र यस्ता बगैंचाहरूको शुभसन्देश दिन्छन् जसमा तिनीहरूका निम्ति अनन्त वैभव रहनेछ;

خٰلِدِيْنَ فِيْهَآ اَبَدًا ۭ اِنَّ اللّٰهَ عِنْدَهٗٓ
اَجْرٌ عَظِيْمٌ ﴿٢٢﴾

२२. तिनीहरू त्यहाँ सदा बसोबास गर्नेछन् । निःसन्देह, अल्लाहका जुनाफमा महान प्रतिदान रहेको छ ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا لَا تَتَّخِذُوْٓا
اٰبَآءَكُمْ وَاِخْوَانَكُمْ اَوْلِيَآءَ اِنِ

२३. हे विश्वासीजन हो ! आफ्ना पिता-पुर्खा र भाइ-बन्धुहरूलाई यदि तिनीहरूले विश्वासलाई भन्दा अविश्वासलाई

اسْتَحَبُّوا الْكُفْرَ عَلَى الْإِيمَانِ ۚ وَمَن يَتَوَلَّهُم مِّنكُمْ فَأُولَٰئِكَ هُمُ الظَّالِمُونَ ﴿٢٣﴾

प्राथमिकता दिन्छन् भने, आफ्ना मित्र नबनाऊ । तथा तिमीहरूमध्ये जसले तिनीहरूलाई मित्र बनाउँछन्, तिनीहरू नै अत्याचारी रहेका छन् ।

قُلْ إِن كَانَ آبَاؤُكُمْ وَأَبْنَاؤُكُمْ وَإِخْوَانُكُمْ وَأَزْوَاجُكُمْ وَعَشِيرَتُكُمْ وَأَمْوَالٌ اقْتَرَفْتُمُوهَا وَتِجَارَةٌ تَخْشَوْنَ كَسَادَهَا وَمَسَاكِنُ تَرْضَوْنَهَا أَحَبَّ إِلَيْكُم مِّنَ اللَّهِ وَرَسُولِهِ وَجِهَادٍ فِي سَبِيلِهِ فَتَرَبَّصُوا حَتَّىٰ يَأْتِيَ اللَّهُ بِأَمْرِهِ ۗ وَاللَّهُ لَا يَهْدِي الْقَوْمَ الْفَاسِقِينَ ﴿٢٤﴾

२४. तिमी भन, यदि तिमीहरूका पितृहरू र तिमीहरूका पुत्रहरू तथा तिमीहरूका भाईवन्धुहरू, र तिमीहरूका पत्नीहरू, तथा तिमीहरूका कुटुम्बहरू र तिमीहरूले कमाएको धन, तथा त्यो व्यापार जसको हानिप्रति तिमीहरू डराउँछौ र ती घरहरू जसलाइ तिमीहरू मनपराउँछौ, (यी सबैकुरा) अल्लाह र उनका सन्देशवाहक तथा उनका मार्गमा संघर्ष गर्नुभन्दा तिमीहरूलाई अधिक प्रिय रहेका छन् भने, अल्लाह आफ्नो निर्णयका साथ आउन्जेलसम्म पर्ख; तथा अल्लाहले अवज्ञाकारी व्यक्तिहरूलाई मार्ग पदर्शन गर्दैनन् ।

لَقَدْ نَصَرَكُمُ اللَّهُ فِي مَوَاطِنَ كَثِيرَةٍ ۙ وَيَوْمَ حُنَيْنٍ ۙ إِذْ أَعْجَبَتْكُمْ كَثْرَتُكُمْ فَلَمْ تُغْنِ عَنكُمْ شَيْئًا وَضَاقَتْ عَلَيْكُمُ الْأَرْضُ بِمَا رَحُبَتْ ثُمَّ وَلَّيْتُم مُّدْبِرِينَ ﴿٢٥﴾

२५. निश्चय नै, अल्लाहले तिमीहरूलाई कैयौं युद्ध क्षेत्रमा तथा हुनैनमा (त्यस) दिन मद्दत गरेका थिए, जब तिमीहरूको ठूलो सङ्ख्याले तिमीहरूलाई अहङ्कारी तुल्याएको थियो, परन्तु त्यसले तिमीहरूलाई केही फाइदा भएन; तथा पृथ्वी आफ्नो (पूर्ण) विस्तृतता साथ हुँदाहुँदै पनि तिमीहरूप्रति भने सङ्कीर्ण हुन गएको थियो, (तथा) पुनः तिमीहरू पिठ्यूँ देखाएर फर्किएका थियौ ।

ثُمَّ أَنزَلَ اللَّهُ سَكِينَتَهُ عَلَىٰ رَسُولِهِ وَعَلَى الْمُؤْمِنِينَ وَأَنزَلَ جُنُودًا لَّمْ تَرَوْهَا وَعَذَّبَ الَّذِينَ كَفَرُوا ۚ وَذَٰلِكَ جَزَاءُ الْكَافِرِينَ ﴿٢٦﴾

२६. त्यसपछि अल्लाहले आफ्ना सन्देशवाहकप्रति तथा विश्वासीहरूप्रति शान्ति अवतीर्ण गरे, तथा (यस्ता) लस्करहरू अवतीर्ण गरे जसलाई तिमीहरू देख्दैन्थ्यौ । तथा उनले ती व्यक्तिहरूलाई सजाय दिए जसले अविश्वास गरेका थिए । तथा अविश्वासीहरूको यही नै प्रतिदान

रहेको छ ।

२७. अत: अल्लाहले त्यसपछि, जसप्रति चाहन्छन् त्यसतर्फ कृपादृष्टि गर्नेछन्; तथा अल्लाह परम क्षमाशील, परम दानशील रहेका छन् ।

ثُمَّ يَتُوبُ اللَّهُ مِنْ بَعْدِ ذَٰلِكَ عَلَىٰ مَنْ يَشَاءُ ۗ وَاللَّهُ غَفُورٌ رَحِيمٌ ﴿٢٧﴾

२८. हे विश्वासीजन हो ! नि:सन्देह मूर्तिपूजकहरू अपवित्र रहेका छन् । त्यसकारण तिनीहरूको यस सालपश्चात् तिनीहरू पवित्र मस्जिदका निकट नआऊन् । तथा यदि तिमीहरूलाई दरिद्रताको भय रहेको छ भने, अल्लाहको इच्छा रहेमा उनले आफ्नो अनुग्रहद्वारा तिमीहरूलाई सम्पन्न तुल्याउने छन् । निश्चय नै, अल्लाह सर्वज्ञ, तत्त्वज्ञ रहेका छन् ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا إِنَّمَا الْمُشْرِكُونَ نَجَسٌ فَلَا يَقْرَبُوا الْمَسْجِدَ الْحَرَامَ بَعْدَ عَامِهِمْ هَٰذَا ۚ وَإِنْ خِفْتُمْ عَيْلَةً فَسَوْفَ يُغْنِيكُمُ اللَّهُ مِنْ فَضْلِهِ إِنْ شَاءَ ۚ إِنَّ اللَّهَ عَلِيمٌ حَكِيمٌ ﴿٢٨﴾

२९. पुस्तकप्राप्त मानिसहरूमध्ये ती व्यक्तिहरूसँग लडाइँ गर जसले अल्लाहप्रति र अन्तिम दिनप्रति विश्वास गर्दैनन्, तथा त्यस (वस्तुलाई) अवैध ठान्दैनन् जुन वस्तुलाई अल्लाह र उनका सन्देशवाहकले अवैध घोषित गरेका छन्, न त साँचो धर्मको अनुसरण गर्छन्, जबसम्म तिनीहरूले (आज्ञाकारी बनी आफ्ना) हातले कर तिर्दैनन् तथा स्वयम्लाई (तिमीहरू)अन्तर्गत गर्दैनन्

قَاتِلُوا الَّذِينَ لَا يُؤْمِنُونَ بِاللَّهِ وَلَا بِالْيَوْمِ الْآخِرِ وَلَا يُحَرِّمُونَ مَا حَرَّمَ اللَّهُ وَرَسُولُهُ وَلَا يَدِينُونَ دِينَ الْحَقِّ مِنَ الَّذِينَ أُوتُوا الْكِتَابَ حَتَّىٰ يُعْطُوا الْجِزْيَةَ عَنْ يَدٍ وَهُمْ صَاغِرُونَ ﴿٢٩﴾

३०. तथा यहुदीहरू भन्छन्, यज्रा अल्लाहको पुत्र हो, तथा इसाईहरू भन्छन, मसीह अल्लाहका पुत्र हुन्; यी केवल तिनीहरूका मुखका कुरा हुन् । तिनीहरूले आफूभन्दा पहिलेका अविश्वासीहरूको भनाइको नक्कल गरेका हुन् । अल्लाहको प्रकोप तिनीहरूमाथि परोस् । कसरी तिनीहरूलाई विमुख तुल्याइएको छ !

وَقَالَتِ الْيَهُودُ عُزَيْرٌ ابْنُ اللَّهِ وَقَالَتِ النَّصَارَى الْمَسِيحُ ابْنُ اللَّهِ ۖ ذَٰلِكَ قَوْلُهُمْ بِأَفْوَاهِهِمْ ۖ يُضَاهِئُونَ قَوْلَ الَّذِينَ كَفَرُوا مِنْ قَبْلُ ۚ قَاتَلَهُمُ اللَّهُ ۚ أَنَّىٰ يُؤْفَكُونَ ﴿٣٠﴾

३१. तिनीहरूले आफ्ना विज्ञ पुरुषहरूलाई र सन्यासीहरूलाई अल्लाहका स्थानमा उपास्य

اتَّخَذُوا أَحْبَارَهُمْ وَرُهْبَانَهُمْ أَرْبَابًا مِنْ دُونِ اللَّهِ وَالْمَسِيحَ ابْنَ مَرْيَمَ

وَمَآ أُمِرُوٓا إِلَّا لِيَعْبُدُوٓا إِلَٰهًا وَّاحِدًا ۚ لَآ إِلَٰهَ إِلَّا هُوَ ۚ سُبْحَٰنَهُۥ عَمَّا يُشْرِكُونَ ﴿٣١﴾

तुल्याएका छन् । तथा (यसै प्रकार तिनीहरूले) मरियमपुत्र, मसीहलाई (उपास्य तुल्याएका छन्) । तथा तिनीहरूलाई त केवल एकमात्र उपास्यको उपासना गर्ने आदेश दिइएको थियो । उनीबाहेक अन्य कोही उपास्य छैन । जसलाई तिनीहरूले (उनका) भागीदार तुल्याउँछन् त्यसबाट उनी पूर्ण पवित्र रहेका छन् ।

يُرِيدُونَ أَن يُطْفِـُٔوا نُورَ ٱللَّهِ بِأَفْوَٰهِهِمْ وَيَأْبَى ٱللَّهُ إِلَّآ أَن يُتِمَّ نُورَهُۥ وَلَوْ كَرِهَ ٱلْكَٰفِرُونَ ﴿٣٢﴾

३२. तिनीहरू आफ्ना मुखले अल्लाहको ज्योतिलाई निभाउन चाहन्छन्; परन्तु अल्लाहले आफ्नो ज्योतिलाई पूर्ण गर्नुबाहेक अन्य कुराको अनुमति दिने छैनन्, यद्यपि अविश्वासीहरूले (त्यसलाई) मन नपराउन ।

هُوَ ٱلَّذِىٓ أَرْسَلَ رَسُولَهُۥ بِٱلْهُدَىٰ وَدِينِ ٱلْحَقِّ لِيُظْهِرَهُۥ عَلَى ٱلدِّينِ كُلِّهِۦ وَلَوْ كَرِهَ ٱلْمُشْرِكُونَ ﴿٣٣﴾

३३. ती उनी नै हुन् जसले आफ्ना सन्देशवाहकलाई मार्गदर्शन तथा साँचो धर्मकासाथ पठाए, ताकि उनले त्यसलाई (अन्य) सबै धर्महरुमाथि विजयी तुल्याउन, चाहे मूर्तिपूजकहरूले (त्यसलाई) कति नै किन मन नपराउन ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوٓا إِنَّ كَثِيرًا مِّنَ ٱلْأَحْبَارِ وَٱلرُّهْبَانِ لَيَأْكُلُونَ أَمْوَٰلَ ٱلنَّاسِ بِٱلْبَٰطِلِ وَيَصُدُّونَ عَن سَبِيلِ ٱللَّهِ ۗ وَٱلَّذِينَ يَكْنِزُونَ ٱلذَّهَبَ وَٱلْفِضَّةَ وَلَا يُنفِقُونَهَا فِى سَبِيلِ ٱللَّهِ فَبَشِّرْهُم بِعَذَابٍ أَلِيمٍ ﴿٣٤﴾

३४. हे विश्वासीजन हो ! निश्चय नै, कतिपय धर्मविद्हरु र सन्यासीहरू अनुचित ढङ्गले मानिसहरूको धन खाने गर्छन् तथा अल्लाहका मार्गबाट (मानिसहरूलाई) विमुख तुल्याउने गर्छन् । तथा ती व्यक्तिहरू जसले सुन र चाँदी एकत्रित गर्छन् तथा त्यसलाई अल्लाहका मार्गमा खर्च गर्दैनन् तिनीहरूलाई पीडादायक दण्डको सन्देश देउ,

يَوْمَ يُحْمَىٰ عَلَيْهَا فِى نَارِ جَهَنَّمَ فَتُكْوَىٰ بِهَا جِبَاهُهُمْ وَجُنُوبُهُمْ وَظُهُورُهُمْ ۖ هَٰذَا مَا كَنَزْتُمْ لِأَنفُسِكُمْ فَذُوقُوا مَا كُنتُمْ تَكْنِزُونَ ﴿٣٥﴾

३५. त्यस दिन जब नर्कको अग्निमा त्यसलाई तताइनेछ, र त्यसद्वारा तिनीहरूका निधार र तिनीहरूका काखीहरू र तिनीहरूका पिठ्यूँ डामिनेछन् (तथा तिनीहरूलाई भनिनेछ) : "तिमीहरूले स्वयम्का निम्ति जम्मा गरेको कुरा यही हो।

अत: अब तिमीहरू त्यसलाई चाख जुनकुरा तिमीहरु जम्मा गर्ने गर्थ्यौ ।"

إِنَّ عِدَّةَ الشُّهُورِ عِنْدَ اللّٰهِ اثْنَا
عَشَرَ شَهْرًا فِي كِتٰبِ اللّٰهِ يَوْمَ خَلَقَ
السَّمٰوٰتِ وَالْأَرْضَ مِنْهَا أَرْبَعَةٌ حُرُمٌ
ذٰلِكَ الدِّينُ الْقَيِّمُ فَلَا تَظْلِمُوا
فِيهِنَّ أَنْفُسَكُمْ وَقَاتِلُوا الْمُشْرِكِينَ
كَآفَّةً كَمَا يُقَاتِلُونَكُمْ كَآفَّةً وَ
اعْلَمُوا أَنَّ اللّٰهَ مَعَ الْمُتَّقِينَ ﴿٣٦﴾

३६. अल्लाहको विधानअनुसार जब उनले आकाशमण्डल र पृथ्वीको सिर्जना गरे त्यसैदिनदेखि महिनाहरूको गणना अल्लाहसमक्ष बाह्र महिना नै रहँदैआएको छ। ती मध्ये, चार पवित्र रहेका छन् । यही नै कायम रहने धर्म हो । अत: यिनीहरुमा स्वयम्प्रति अत्याचार नगर । तथा एकजूट भएर सबै मिलेर मूर्तिपुजकहरूसँग लडाइँ गर जसरी तिनीहरू एकजूट भएर तिमीहरूसँग लड्छन्; तथा अल्लाह निष्ठावान व्यक्तिहरूसँग रहेका छन् भनी जान ।

إِنَّمَا النَّسِيءُ زِيَادَةٌ فِي الْكُفْرِ يُضَلُّ
بِهِ الَّذِينَ كَفَرُوا يُحِلُّونَهُ عَامًا
وَّيُحَرِّمُونَهُ عَامًا لِّيُوَاطِئُوا عِدَّةَ
مَا حَرَّمَ اللّٰهُ فَيُحِلُّوا مَا حَرَّمَ اللّٰهُ
زُيِّنَ لَهُمْ سُوءُ أَعْمَالِهِمْ وَاللّٰهُ لَا
يَهْدِي الْقَوْمَ الْكٰفِرِينَ ﴿٣٧﴾

३७. निश्चय नै, (पवित्र महिनालाई) अधिपछि सार्ने कार्य विश्वासहीनतामा बृद्धि हो । त्यसद्वारा तिनीहरुलाई पथभ्रष्ट गरिन्छ जसले अविश्वास गरे । तिनीहरू त्यसलाई एक वर्ष वैध ठहऱ्याउँछन् भने अर्को वर्ष त्यसलाई अवैध ठहऱ्याउँछन्, ताकि तिनीहरू अल्लाहले पवित्र घोषित गरेका -महिनाहरूको) सङ्ख्यामा समन्वय गर्न सकून् तथा यस प्रकार अल्लाहले अवैध ठहऱ्याएका (वस्तुहरूलाई) वैध तुल्याउन सकून् । तिनीहरूका निम्ति तिनीहरूका अप-कर्महरू सुन्दर तुल्याएर देखाइएको छ तथा अल्लाह अविश्वासी व्यक्तिहरूलाई मार्ग प्रदर्शन गर्दैनन् ।

يٰٓأَيُّهَا الَّذِينَ آمَنُوا مَا لَكُمْ إِذَا قِيلَ
لَكُمُ انْفِرُوا فِي سَبِيلِ اللّٰهِ اثَّاقَلْتُمْ
إِلَى الْأَرْضِ أَرَضِيتُمْ بِالْحَيٰوةِ الدُّنْيَا
مِنَ الْآخِرَةِ فَمَا مَتَاعُ الْحَيٰوةِ الدُّنْيَا
فِي الْآخِرَةِ إِلَّا قَلِيلٌ ﴿٣٨﴾

३८. हे विश्वासीजन हो ! तिमीहरूलाई के भएको छ? जब तिमीहरूलाई अल्लाहका मार्गमा निस्क भनी निर्देश दिइन्छ तिमीहरू संसारतर्फ पूर्णरूपले झुक्छौ? के परलोकको तुलनामा वर्तमान जीवनप्रति नै तिमीहरू अधिक सन्तुष्ट रहेका छौ? परन्तु परलोकमा भने वर्तमान जीवनको लाभ नगण्य र तुच्छ

देखिने छ ।

إِلَّا تَنفِرُوا يُعَذِّبْكُمْ عَذَابًا أَلِيمًا ۙ
وَيَسْتَبْدِلْ قَوْمًا غَيْرَكُمْ وَلَا تَضُرُّوهُ
شَيْئًا ۗ وَاللَّهُ عَلَىٰ كُلِّ شَيْءٍ قَدِيرٌ ﴿٣٩﴾

३९. यदि तिमीहरू (लड्नका निम्ति) निस्किएनौ भने, उनले तिमीहरूलाई पीडादायक दण्डद्वारा दण्डित गर्नेछन् र तिमीहरूका स्थानमा एक अन्य जातिलाई चुन्नेछन् तथा तिमीहरूले उनको कुनै हानि गर्न सक्नेछैनौ । तथा सम्पूर्ण वस्तुहरूमाथि अल्लाह पूर्ण सामर्थ्यवान रहेका छन् ।

إِلَّا تَنصُرُوهُ فَقَدْ نَصَرَهُ اللَّهُ إِذْ
أَخْرَجَهُ الَّذِينَ كَفَرُوا ثَانِيَ اثْنَيْنِ
إِذْ هُمَا فِي الْغَارِ إِذْ يَقُولُ لِصَاحِبِهِ
لَا تَحْزَنْ إِنَّ اللَّهَ مَعَنَا ۖ فَأَنزَلَ
اللَّهُ سَكِينَتَهُ عَلَيْهِ وَأَيَّدَهُ بِجُنُودٍ
لَّمْ تَرَوْهَا وَجَعَلَ كَلِمَةَ الَّذِينَ كَفَرُوا
السُّفْلَىٰ ۗ وَكَلِمَةُ اللَّهِ هِيَ الْعُلْيَا ۗ وَاللَّهُ
عَزِيزٌ حَكِيمٌ ﴿٤٠﴾

४०.यदि तिमीहरूले उनलाई मद्दत गरेनौ भने, (ज्ञात राख) अल्लाहले त्यसबेला उनलाई मद्दत गरेका थिए जुनबेला अविश्वासीहरूले उनलाई दुइमध्ये एकस्वरूप उनीहरू दुबै गुफामा भएको समयमा निष्कासित गरेका थिए । जब उनले आफ्ना मित्रलाई भनेका थिए, "दुःखित नहोउ, किनभने अल्लाह हामीसँग रहेका छन् ।" त्यसपछि अल्लाहले उनीप्रति आफ्नो शान्ति अवतीर्ण गरे तथा यस्ता लस्करहरूद्वारा उनलाई सुदृढ तुल्याए जसलाई तिमीहरूले देखेका थिएनौ, तथा अविश्वासीहरूको भनाइलाई निम्न तुल्याए । तथा केवल अल्लाहको वचन यस्तो रहेको छ जो सर्वोपरि रहन्छ । तथा अल्लाह सर्वशक्तिमान, तत्त्वज्ञ छन् ।

انفِرُوا خِفَافًا وَثِقَالًا وَجَاهِدُوا
بِأَمْوَالِكُمْ وَأَنفُسِكُمْ فِي سَبِيلِ
اللَّهِ ۚ ذَٰلِكُمْ خَيْرٌ لَّكُمْ إِن كُنتُمْ
تَعْلَمُونَ ﴿٤١﴾

४१. हलुका र भारी प्रस्थान गर, तथा अल्लाहका मार्गमा आफ्नो धन र आफ्नो ज्यानका साथ संघर्ष गर । यदि तिमीहरूलाई ज्ञात भएमा यही तिमीहरूका निम्ति उत्तम रहेको छ ।

لَوْ كَانَ عَرَضًا قَرِيبًا وَسَفَرًا
قَاصِدًا لَّاتَّبَعُوكَ وَلَٰكِن بَعُدَتْ
عَلَيْهِمُ الشُّقَّةُ ۚ وَسَيَحْلِفُونَ
بِاللَّهِ لَوِ اسْتَطَعْنَا لَخَرَجْنَا مَعَكُمْ

४२. यदि त्यो तत्कालै हुने लाभ र छोटो यात्रा रहेको भए, तिनीहरूले अवश्य नै तिमीलाई पछ्याउने थिए, परन्तु त्यो कठिन यात्रा तिनीहरूलाई अति लामो लाग्यो । अझै पनि तिनीहरूले अल्लाहको शपथ

يُهْلِكُوْنَ اَنْفُسَهُمْ ۚ وَاللّٰهُ يَعْلَمُ اِنَّهُمْ لَكٰذِبُوْنَ ۝٤٢

खाएर भन्नेछन्, यदि हामी योग्य रहेका भए निश्चय नै हामी तिमीहरूसँग प्रस्थान गर्ने थियौं ।" तिनीहरू आफ्ना आत्मालाई विनष्ट गर्छन्, तथा तिनीहरू मिथ्यावादी रहेका छन् भन्ने अल्लाहलाई थाहा छ ।

عَفَا اللّٰهُ عَنْكَ ۚ لِمَ اَذِنْتَ لَهُمْ حَتّٰى يَتَبَيَّنَ لَكَ الَّذِيْنَ صَدَقُوْا وَتَعْلَمَ الْكٰذِبِيْنَ ۝٤٣

४३. अल्लाहले तिम्रो (चिन्ता) निवारण गरून् । साँचो बोल्ने व्यक्तिहरूलाई सनाखत नगरी र मिथ्यावादीहरूलाई राम्ररी नठम्याइकन किन तिमीले तिनीहरूलाई (पछि रहने) अनुमति दिएका थियौ त?

لَا يَسْتَاْذِنُكَ الَّذِيْنَ يُؤْمِنُوْنَ بِاللّٰهِ وَالْيَوْمِ الْاٰخِرِ اَنْ يُّجَاهِدُوْا بِاَمْوَالِهِمْ وَاَنْفُسِهِمْ ۗ وَاللّٰهُ عَلِيْمٌۢ بِالْمُتَّقِيْنَ ۝٤٤

४४. जुन व्यक्तिहरू अल्लाहप्रति र अन्तिम दिनप्रति विश्वास गर्छन् तिनीहरूले आफ्नो धन र ज्यानकासाथ अल्लाहका मार्गमा संघर्ष गर्नबाट (बच्नका निम्ति) तिमीसँग अनुमति माग्नेछैनन् । तथा अल्लाह निष्ठावान व्यक्तिहरूलाई राम्ररी चिन्दछन् ।

اِنَّمَا يَسْتَاْذِنُكَ الَّذِيْنَ لَا يُؤْمِنُوْنَ بِاللّٰهِ وَالْيَوْمِ الْاٰخِرِ وَارْتَابَتْ قُلُوْبُهُمْ فَهُمْ فِيْ رَيْبِهِمْ يَتَرَدَّدُوْنَ ۝٤٥

४५. केवल ती व्यक्तिहरूले तिमीसँग (छुटकारा प्राप्तिको) अनुमति माग्नेछन् जुन व्यक्तिहरू अल्लाह र अन्तिम दिनप्रति विश्वास गर्दैनन् तथा जसको हृदय सन्देहले परिपूर्ण रहेको छ र तिनीहरू आफ्नै सन्देहमा किंकर्तव्यविमूढ रहेका छन् ।

وَلَوْ اَرَادُوا الْخُرُوْجَ لَاَعَدُّوْا لَهٗ عُدَّةً وَّلٰكِنْ كَرِهَ اللّٰهُ انْۢبِعَاثَهُمْ فَثَبَّطَهُمْ وَقِيْلَ اقْعُدُوْا مَعَ الْقٰعِدِيْنَ ۝٤٦

४६. तथा यदि तिनीहरूमा प्रस्थान गर्ने दृढ अभिप्राय रहेको भए त्यसका निम्ति तिनीहरूले अवश्य केही तयारी गर्ने थिए, परन्तु तिनीहरू अघि बढुन भन्ने अल्लाहको इच्छा थिएन । त्यसकारण उनले तिनीहरूलाई पछि रोकेर राखे, तथा भनियो, "बसिरहनेहरूसँग तिमीहरू (घरमा) बस ।"

لَوْ خَرَجُوْا فِيْكُمْ مَّا زَادُوْكُمْ اِلَّا خَبَالًا وَّلَاَاوْضَعُوْا خِلٰلَكُمْ

४७. यदि तिनीहरू तिमीहरूसँग निस्कन्थे भने, अनुशासन भड्ग गर्नबाहेक

يَبْغُوْنَكُمُ الْفِتْنَةَ ۚ وَ فِيْكُمْ سَمّٰعُوْنَ لَهُمْ ۗ وَاللّٰهُ عَلِيْمٌۢ بِالظّٰلِمِيْنَ ﴿٤٧﴾

तिनीहरूले तिमीहरूमा केही वृद्धि गर्ने थिएनन्, तथा तिनीहरू तिमीहरूबीच विसंगति (उत्पन्न) गर्नका निम्ति यता र उता दगुर्ने थिए । तथा तिमीहरूमध्ये केही यस्ता व्यक्तिहरू छन् जो तिनीहरूका निम्ति सुन्छन् । तथा अन्यायकारी व्यक्तिहरूलाई अल्लाह राम्ररी चिन्दछन् ।

لَقَدِ ابْتَغَوُا الْفِتْنَةَ مِنْ قَبْلُ وَ قَلَّبُوْا لَكَ الْاُمُوْرَ حَتّٰى جَآءَ الْحَقُّ وَ ظَهَرَ اَمْرُ اللّٰهِ وَ هُمْ كٰرِهُوْنَ ﴿٤٨﴾

४८. यस अघि (पनि) तिनीहरूले फसाद (खडा) गर्ने प्रयत्न गरेका थिए, तथा तिमी समक्ष मामिलाहरु उल्टापुल्टा प्रस्तुत गरेका थिए, यतिकैमा सत्यको आगमन भयो र अल्लाहको उद्देश्य सर्वोपरी भयो यद्यपि तिनीहरू (त्यसलाई) रुचाउँदैनथे ।

وَ مِنْهُمْ مَّنْ يَّقُوْلُ ائْذَنْ لِّيْ وَلَا تَفْتِنِّيْ ۗ اَلَا فِي الْفِتْنَةِ سَقَطُوْا ۗ وَاِنَّ جَهَنَّمَ لَمُحِيْطَةٌۢ بِالْكٰفِرِيْنَ ﴿٤٩﴾

४९. तथा तिनीहरूमध्ये त्यो छ जसले "मलाई (पछि बस्ने) अनुमति देउ तथा मलाई परीक्षामा नधकेल" भन्छ। निश्चय नै तिनीहरू त पहिला नै परीक्षामा धकेलिएका छन् । तथा अविश्वासीहरूलाई अवश्य नर्कले घेर्नेछ ।

اِنْ تُصِبْكَ حَسَنَةٌ تَسُؤْهُمْ ۚ وَاِنْ تُصِبْكَ مُصِيْبَةٌ يَّقُوْلُوْا قَدْ اَخَذْنَآ اَمْرَنَا مِنْ قَبْلُ وَ يَتَوَلَّوْا وَّ هُمْ فَرِحُوْنَ ﴿٥٠﴾

५०. यदि तिमीले असल कुरा प्राप्त गरेमा त्यसले तिनीहरूलाई दुखित तुल्याउँछ, परन्तु यदि तिमीमाथि सङ्कट आइलागेमा भने तिनीहरू भन्छन्, "हामीले त पहिला नै आफ्नो सुरक्षाको व्यवस्था मिलाएका थियौं ।" तथा तिनीहरू इत्रिदै विमुख हुन्छन् ।

قُلْ لَّنْ يُّصِيْبَنَآ اِلَّا مَا كَتَبَ اللّٰهُ لَنَا ۚ هُوَ مَوْلٰىنَا ۚ وَ عَلَى اللّٰهِ فَلْيَتَوَكَّلِ الْمُؤْمِنُوْنَ ﴿٥١﴾

५१. तिमी भन, "जुन कुरा अल्लाहले हाम्रानिम्ति निर्धारित गरेका छन् त्यसबाहेक अन्य कुनै कुरा हामीमाथि आइपर्ने छैन । उनी नै हाम्रा संरक्षक हुन् । त्यसकारण विश्वासीहरूले अल्लाहप्रति नै आफ्नो भरोसा राख्नु उचित हुनेछ ।"

قُلْ هَلْ تَرَبَّصُوْنَ بِنَآ اِلَّآ اِحْدَى الْحُسْنَيَيْنِ ۗ وَ نَحْنُ نَتَرَبَّصُ بِكُمْ

५२. तिमी भन, "दुईवटा उत्तम वस्तुहरूमध्ये एउटा हामीलाई (प्राप्त होस्)

أَنْ يُصِيبَكُمُ اللَّهُ بِعَذَابٍ مِّنْ
عِندِهِ أَوْ بِأَيْدِينَا ۖ فَتَرَبَّصُوا إِنَّا
مَعَكُم مُّتَرَبِّصُونَ ﴿٥٢﴾

भन्ने कुराबाहेक तिमीहरू अन्य केही कुराको अपेक्षा गर्दैनौ, हामी (भने तिमीहरूका निम्ति) अल्लाहले तिमीहरूलाई स्वयम् अथवा हाम्रा हातद्वारा दण्ड दिनेछन् भन्ने अपेक्षा राख्छौं । अतः तिमीहरू प्रतीक्षा गर, हामी (पनि) तिमीहरूसितै प्रतीक्षा गरिरहन्छौं ।

قُلْ أَنفِقُوا طَوْعًا أَوْ كَرْهًا لَّن
يُتَقَبَّلَ مِنكُمْ ۖ إِنَّكُمْ كُنتُمْ
قَوْمًا فَاسِقِينَ ﴿٥٣﴾

५३. तिमी भन, "तिमीहरू चाहे इच्छापूर्वक खर्च गर अथवा अनिच्छापूर्वक, तिमीहरूबाट कदापि त्यो स्वीकार गरिनेछैन । तिमीहरू निस्सन्देह अवज्ञाकारी जातिहरू हौ ।"

وَمَا مَنَعَهُمْ أَن تُقْبَلَ مِنْهُمْ نَفَقَاتُهُمْ
إِلَّا أَنَّهُمْ كَفَرُوا بِاللَّهِ وَبِرَسُولِهِ وَلَا
يَأْتُونَ الصَّلَاةَ إِلَّا وَهُمْ كُسَالَىٰ وَلَا
يُنفِقُونَ إِلَّا وَهُمْ كَارِهُونَ ﴿٥٤﴾

५४. तथा तिनीहरूले अल्लाह र उनका सन्देशवाहकप्रति अविश्वास गर्नेबाहेक अन्य कुनै कुराले तिनीहरूको आर्थिक सहयोग स्वीकार्नमा तिनीहरुलाई वञ्चित गरेको छैन । तथा तिनीहरू नमाजमा आउँदैनन् परन्तु सुस्तीका साथ। तथा आर्थिक सहयोग गर्दैनन् । परन्तु अनिच्छापूर्वक ।

فَلَا تُعْجِبْكَ أَمْوَالُهُمْ وَلَا أَوْلَادُهُمْ ۚ
إِنَّمَا يُرِيدُ اللَّهُ لِيُعَذِّبَهُم بِهَا فِي
الْحَيَاةِ الدُّنْيَا وَتَزْهَقَ أَنفُسُهُمْ
وَهُمْ كَافِرُونَ ﴿٥٥﴾

५५. अतः तिनीहरूको धन र तिनीहरूका सन्तानले तिमीलाई आश्चर्यचकित नतुल्याउन् । अल्लाह केवल त्यसद्वारा तिनीहरूलाई यसै जीवनमा दण्ड दिन चाहन्छन् तथा तिनीहरू अविश्वासी रहेका अवस्थामा नै तिनीहरूको प्राण जाओस् (भन्ने चाहन्छन्) ।

وَيَحْلِفُونَ بِاللَّهِ إِنَّهُمْ لَمِنكُمْ
وَمَا هُم مِّنكُمْ وَلَٰكِنَّهُمْ قَوْمٌ
يَفْرَقُونَ ﴿٥٦﴾

५६. तथा तिनीहरू वस्तुतः तिमीहरूमध्येकै हुन् भनी अल्लाहको शपथ खान्छन् । वस्तुतः तिनीहरू तिमीहरूमध्येका होइनन्, अपितु तिनीहरू डरपोक किसिमका मानिसहरू रहेका छन् ।

لَوْ يَجِدُونَ مَلْجَأً أَوْ مَغَارَاتٍ أَوْ مُدَّخَلًا
لَّوَلَّوْا إِلَيْهِ وَهُمْ يَجْمَحُونَ ﴿٥٧﴾

५७. यदि तिनीहरूलाई कुनै आश्रयस्थान, अथवा गुफा वा छिर्नलाई एउटा प्वाल (मात्र) प्राप्त भएमा, तिनीहरू निश्चय नै

त्यसतर्फ अनियन्त्रित भई दगुर्नेछन् ।

وَمِنْهُمْ مَّنْ يَّلْمِزُكَ فِي الصَّدَقٰتِ ۚ فَاِنْ اُعْطُوْا مِنْهَا رَضُوْا وَاِنْ لَّمْ يُعْطَوْا مِنْهَآ اِذَا هُمْ يَسْخَطُوْنَ ﴿٥٨﴾

५८. तथा तिनीहरूमध्ये केही यस्ता व्यक्तिहरू छन् जसले तिमीमाथि दानको (सम्बन्धमा) आरोप लगाउँछन् । यदि तिनीहरूलाई त्यसबाट प्रदान गरिएमा, तिनीहरू प्रसन्न हुन्छन्, परन्तु यदि त्यसबाट तिनीहरूलाई प्राप्त नभएमा, हेर ! तिनीहरू असन्तुष्ट हुन्छन् ।

وَلَوْ اَنَّهُمْ رَضُوْا مَآ اٰتٰىهُمُ اللّٰهُ وَرَسُوْلُهٗ ۙ وَقَالُوْا حَسْبُنَا اللّٰهُ سَيُؤْتِيْنَا اللّٰهُ مِنْ فَضْلِهٖ وَرَسُوْلُهٗٓ ۙ اِنَّآ اِلَى اللّٰهِ رٰغِبُوْنَ ﴿٥٩﴾

ع

५९. यदि अल्लाह तथा उनका सन्देशवाहकले प्रदान गरेका वस्तुबाट तिनीहरू सन्तुष्ट रहेका भए र "अल्लाह र उनका सन्देशवाहक हाम्रा निम्ति पर्याप्त रहेका छन्, निश्चय नै अल्लाहले हामीलाई उनको अपार समृद्धिबाट प्रदान गर्नेछन्, हामी त विनम्रताका साथ अल्लाहतर्फ नै झुक्छौं," भनेका भए (त्यो तिनीहरूका निम्ति अति उत्तम हुनेथियो) ।

اِنَّمَا الصَّدَقٰتُ لِلْفُقَرَآءِ وَالْمَسٰكِيْنِ وَالْعٰمِلِيْنَ عَلَيْهَا وَالْمُؤَلَّفَةِ قُلُوْبُهُمْ وَفِي الرِّقَابِ وَالْغٰرِمِيْنَ وَفِيْ سَبِيْلِ اللّٰهِ وَابْنِ السَّبِيْلِ ۗ فَرِيْضَةً مِّنَ اللّٰهِ ۗ وَاللّٰهُ عَلِيْمٌ حَكِيْمٌ ﴿٦٠﴾

६०. दान (कोष) त दरिद्रहरु र अभावग्रस्त व्यक्तिहरूका निम्ति मात्र हो तथा ती व्यक्तिहरूका निम्ति हो जुन व्यक्तिहरू त्यसका व्यवस्थापनमा नियुक्त छन्, तथा तिनीहरुका निम्ति, जसका हृदयलाई जोड्नु छ र दासहरूलाई (मुक्त गर्नाका) निम्ति तथा ऋणीहरूका निम्ति र अल्लाहका मार्गमा (खर्च गर्नाका) निम्ति तथा पथिकहरूका निम्ति रहेको छ– अल्लाहद्वारा निर्धारित विधान । तथा अल्लाह सर्वज्ञ, तत्त्वज्ञ छन् ।

وَمِنْهُمُ الَّذِيْنَ يُؤْذُوْنَ النَّبِيَّ وَيَقُوْلُوْنَ هُوَ اُذُنٌ ۗ قُلْ اُذُنُ خَيْرٍ لَّكُمْ يُؤْمِنُ بِاللّٰهِ وَيُؤْمِنُ لِلْمُؤْمِنِيْنَ وَرَحْمَةٌ لِّلَّذِيْنَ اٰمَنُوْا مِنْكُمْ ۗ وَالَّذِيْنَ يُؤْذُوْنَ رَسُوْلَ اللّٰهِ لَهُمْ عَذَابٌ اَلِيْمٌ ﴿٦١﴾

६१. तथा तिनीहरूमध्ये केही यस्ता व्यक्तिहरू छन्, जसले नबीलाई दुखित तुल्याउँछन् र भन्छन्, "उनी ता कानै कान हुन् ।" तिमी भन, "उनले (सबैप्रति) कान धर्नु (दिनु) तिमीहरूका निम्ति मङ्गलमय रहेको छ, उनी अल्लाहप्रति विश्वास गर्छन् तथा विश्वासी व्यक्तिहरूमाथि भरोसा

गर्छन्, तथा तिमीहरूमध्ये विश्वासीजनका निम्ति उनी करुणा रहेका छन् ।" तथा जसले अल्लाहका सन्देशवाहकको मन दुखाउँछन् तिनीहरूलाई पीडादायक दण्ड मिल्नेछ ।

يَحْلِفُونَ بِاللَّهِ لَكُمْ لِيُرْضُوكُمْ وَاللَّهُ وَرَسُولُهُ أَحَقُّ أَنْ يُرْضُوهُ إِنْ كَانُوا مُؤْمِنِينَ ﴿٦٢﴾

६२. तिनीहरू तिमीहरूलाई प्रसन्न गर्नका निम्ति अल्लाहको शपथ खान्छन्, परन्तु यदि तिनीहरू विश्वासी हुन् भने अल्लाह र उनका सन्देशवाहक नै त्यस कुराका अधिक हकदार रहेका छन्, जसलाई तिनीहरूले प्रसन्न तुल्याउन् ।

أَلَمْ يَعْلَمُوا أَنَّهُ مَنْ يُحَادِدِ اللَّهَ وَرَسُولَهُ فَأَنَّ لَهُ نَارَ جَهَنَّمَ خَالِدًا فِيهَا ذَٰلِكَ الْخِزْيُ الْعَظِيمُ ﴿٦٣﴾

६३. जसले अल्लाह र उनका सन्देशवाहकको विरोध गर्छ त्यसका निम्ति नर्कको अग्नि रहेको छ, जसमा त्यो बसोबास गर्नेछ भनी के तिनीहरूलाई ज्ञात छैन र? त्यो एउटा ठूलो अपमान हो ।

يَحْذَرُ الْمُنَافِقُونَ أَنْ تُنَزَّلَ عَلَيْهِمْ سُورَةٌ تُنَبِّئُهُمْ بِمَا فِي قُلُوبِهِمْ قُلِ اسْتَهْزِئُوا إِنَّ اللَّهَ مُخْرِجٌ مَا تَحْذَرُونَ ﴿٦٤﴾

६४. ढोंगी व्यक्तिहरू तिनीहरूविरुद्ध कुनै सूरा (अध्याय) अवतीर्ण होला जसले तिनीहरूका हृदयका कुराहरू उनीहरूप्रति स्पष्ट गरिदेला भनी डराउँछन् । तिमी भन, "तिमीहरू ठट्टा गर ! निश्चय नै अल्लाहले त्यस कुरालाई प्रकाशमा ल्याउनेछन् जसबारे तिमीहरू डराउँछौ ।"

وَلَئِنْ سَأَلْتَهُمْ لَيَقُولُنَّ إِنَّمَا كُنَّا نَخُوضُ وَنَلْعَبُ قُلْ أَبِاللَّهِ وَآيَاتِهِ وَرَسُولِهِ كُنْتُمْ تَسْتَهْزِئُونَ ﴿٦٥﴾

६५. तथा यदि तिमीले तिनीहरूलाई सोध्यौ भने तिनीहरूले अवश्य नै भन्नेछन्, "हामी त केवल गफगाफ र ख्यालठट्टा गर्दै थियौं ।" तिमी भन, "के तिमीहरूले अल्लाह तथा उनका चिह्नहरू र उनका सन्देशवाहकप्रति ठट्टा गरेका थियौ त?

لَا تَعْتَذِرُوا قَدْ كَفَرْتُمْ بَعْدَ إِيمَانِكُمْ إِنْ نَعْفُ عَنْ طَائِفَةٍ مِنْكُمْ نُعَذِّبْ طَائِفَةً بِأَنَّهُمْ كَانُوا مُجْرِمِينَ ﴿٦٦﴾

६६. "कुनै बहाना नगर । तिमीहरूले निश्चय नै विश्वास स्थापनापछि अविश्वास गरेका छौ । यदि हामीले तिमीहरूमध्ये एउटा समूहलाई क्षमा प्रदान गर्‍यौं भने

अन्य एउटा समूहलाई तिनीहरूको अपराधका कारण हामी दण्ड दिनेछौं ।"

اَلْمُنٰفِقُوْنَ وَالْمُنٰفِقٰتُ بَعْضُهُمْ مِّنْۢ
بَعْضٍ ۘ يَاْمُرُوْنَ بِالْمُنْكَرِ وَ
يَنْهَوْنَ عَنِ الْمَعْرُوْفِ وَ
يَقْبِضُوْنَ اَيْدِيَهُمْ ؕ نَسُوا اللّٰهَ
فَنَسِيَهُمْ ؕ اِنَّ الْمُنٰفِقِيْنَ هُمُ
الْفٰسِقُوْنَ ﴿٦٧﴾

६७. ढोँगी पुरुषहरू, तथा महिलाहरू (सबै) परस्पर एक अर्कासँग (सम्बन्धित) रहेका छन् । तिनीहरू अपकर्मको परामर्श दिन्छन् तथा पुण्यबाट रोक्छन् र आफ्ना हात बन्द राख्छन् । तिनीहरूले अल्लाहलाई उपेक्षा गरे, त्यसकारण उनले तिनीहरूलाई उपेक्षा गरेका छन् । निश्चय नै, ढोँगी व्यक्तिहरू नै अवज्ञाकारी हुन् ।

وَعَدَ اللّٰهُ الْمُنٰفِقِيْنَ وَالْمُنٰفِقٰتِ وَ
الْكُفَّارَ نَارَ جَهَنَّمَ خٰلِدِيْنَ فِيْهَا ؕ
هِيَ حَسْبُهُمْ ۚ وَلَعَنَهُمُ اللّٰهُ ۚ وَ
لَهُمْ عَذَابٌ مُّقِيْمٌ ﴿٦٨﴾

६८. अल्लाहले ढोँगी पुरुष, तथा महिलाहरू र अविश्वासीहरूसित नर्कको अग्निको वाचा गरेका छन्, जसमा तिनीहरू बसोबास गर्नेछन् । त्यो तिनीहरूका निम्ति पर्याप्त हुनेछ । तथा अल्लाहले तिनीहरूलाई श्राप दिएका छन् । तथा तिनीहरूले एउटा दीर्घकालीन दण्ड भोग्ने छन् ।

كَالَّذِيْنَ مِنْ قَبْلِكُمْ كَانُوْۤا
اَشَدَّ مِنْكُمْ قُوَّةً وَّاَكْثَرَ اَمْوَالًا وَّ
اَوْلَادًا ؕ فَاسْتَمْتَعُوْا بِخَلَاقِهِمْ
فَاسْتَمْتَعْتُمْ بِخَلَاقِكُمْ كَمَا اسْتَمْتَعَ
الَّذِيْنَ مِنْ قَبْلِكُمْ بِخَلَاقِهِمْ وَ
خُضْتُمْ كَالَّذِيْ خَاضُوْا ؕ اُولٰٓئِكَ
حَبِطَتْ اَعْمَالُهُمْ فِي الدُّنْيَا وَالْاٰخِرَةِ ۚ
وَاُولٰٓئِكَ هُمُ الْخٰسِرُوْنَ ﴿٦٩﴾

६९. तिमीहरूभन्दा अघिका व्यक्तिहरूझैं । ती व्यक्तिहरू तिमीहरूभन्दा अधिक शक्तिसम्पन्न तथा धन र सन्तानमा (तिमीहरूभन्दा) अधिक थिए । तिनीहरूले केही समयसम्म आफ्नो भाग्यको लाभ उठाए, अतः तिमीहरूले (पनि) आफ्नो भाग्यको लाभ उठाएका छौ जसरी तिमीहरूभन्दा पहिलाका व्यक्तिहरूले आफ्नो भाग्यको लाभ उठाएका थिए । तथा तिमीहरू (पनि) त्यसरी नै व्यर्थ कुरामा व्यस्त रह्यौ, जसरी तिनीहरू व्यर्थ कुरामा व्यस्त रहेका थिए । ती उनीहरू नै हुन् जसका कार्यहरू यस संसारमा र परलोकमा लाभदायक हुनेछैनन् । तथा तिनीहरू नै घाटाग्रस्त व्यक्तिहरू रहेका छन् ।

اَلَمْ يَاْتِهِمْ نَبَاُ الَّذِيْنَ مِنْ قَبْلِهِمْ
قَوْمِ نُوْحٍ وَّعَادٍ وَّثَمُوْدَ ۙ وَقَوْمِ

७०. के तिनीहरूलाई तिनीहरूभन्दा पहिलाका – नूहका जातिका मानिसहरू,

إِبْرٰهِيْمَ وَ اَصْحٰبِ مَدْيَنَ وَ الْمُؤْتَفِكٰتِ ۚ اَتَتْهُمْ رُسُلُهُمْ بِالْبَيِّنٰتِ ۚ فَمَا كَانَ اللّٰهُ لِيَظْلِمَهُمْ وَلٰكِنْ كَانُوْٓا اَنْفُسَهُمْ يَظْلِمُوْنَ ﴿٧٠﴾

तथा आद, तथा समूद, र इब्राहिमका जातिका मानिसहरूको तथा मिदियानका बासिन्दाहरूको र घोप्ट्याइएका नगरहरूको खबर प्राप्त भएको छैन र? तिनीहरूसमक्ष तिनीहरूका सन्देशवाहकहरू स्पष्ट चिह्नहरूका साथ आएका थिए । अत: अल्लाहले तिनीहरूप्रति अन्याय गर्न सक्दैनथे, अपितु तिनीहरू स्वयम्ले आफूमाथि अन्याय गरे ।

وَالْمُؤْمِنُوْنَ وَالْمُؤْمِنٰتُ بَعْضُهُمْ اَوْلِيَآءُ بَعْضٍ ۘ يَاْمُرُوْنَ بِالْمَعْرُوْفِ وَ يَنْهَوْنَ عَنِ الْمُنْكَرِ وَ يُقِيْمُوْنَ الصَّلٰوةَ وَيُؤْتُوْنَ الزَّكٰوةَ وَيُطِيْعُوْنَ اللّٰهَ وَرَسُوْلَهٗ ؕ اُولٰٓئِكَ سَيَرْحَمُهُمُ اللّٰهُ ؕ اِنَّ اللّٰهَ عَزِيْزٌ حَكِيْمٌ ﴿٧١﴾

७१. तथा विश्वासी पुरुष र महिलाहरू परस्पर एक अर्काका मित्र रहेका छन् । तिनीहरू पूण्यकार्यको आदेश दिन्छन् तथा दुष्कार्यबाट रोक्छन्, तथा नमाज अनुष्ठान गर्छन् र जगात तिर्छन् तथा अल्लाह र उनका सन्देशवाहकको आज्ञापालन गर्छन् । ती उनीहरू नै हुन् जसमाथि अल्लाहले करुणा गर्नेछन् । अल्लाह निश्चय नै सर्वशक्तिमान, तत्त्वज्ञ रहेका छन् ।

وَعَدَ اللّٰهُ الْمُؤْمِنِيْنَ وَالْمُؤْمِنٰتِ جَنّٰتٍ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ خٰلِدِيْنَ فِيْهَا وَمَسٰكِنَ طَيِّبَةً فِيْ جَنّٰتِ عَدْنٍ ؕ وَرِضْوَانٌ مِّنَ اللّٰهِ اَكْبَرُ ؕ ذٰلِكَ هُوَ الْفَوْزُ الْعَظِيْمُ ﴿٧٢﴾

७२. अल्लाहले विश्वासी पुरुष तथा महिलाहरूलाई यस्ता बगैंचाहरूको वचन दिएका छन्, जसमनि नहरहरू बगिरहेछन्, जसमा तिनीहरू बसोबास गर्नेछन् तथा अनन्त कालसम्म रहने बगैंचाहरूमा आनन्दपूर्ण निवासस्थानहरू(को) । तथा अल्लाहको प्रसन्नता नै सबैभन्दा महान रहेको छ । यही नै महानतम विजय हो ।

يٰٓاَيُّهَا النَّبِيُّ جَاهِدِ الْكُفَّارَ وَ الْمُنٰفِقِيْنَ وَ اغْلُظْ عَلَيْهِمْ ؕ وَ مَاْوٰىهُمْ جَهَنَّمُ ؕ وَبِئْسَ الْمَصِيْرُ ﴿٧٣﴾

७३. हे नबी ! अविश्वासी तथा ढोंगी व्यक्तिहरूविरुद्ध संघर्ष गर तथा तिनीहरूसित कठोरता अवलम्बन गर । तिनीहरूको वासस्थान नर्क हो तथा त्यो एउटा निकृष्ट गन्तव्यस्थल रहेको छ ।

يَحْلِفُوْنَ بِاللّٰهِ مَا قَالُوْا ؕ وَلَقَدْ قَالُوْا كَلِمَةَ الْكُفْرِ وَكَفَرُوْا بَعْدَ

७४. तिनीहरूले केही भनेका थिएनन् भनी तिनीहरू अल्लाहको शपथ खान्छन्, परन्तु तिनीहरूले निस्सन्देह ईश्वरनिन्दापूर्ण भाषा

إِسْلَامِهِمْ وَهَمُّوا بِمَا لَمْ يَنَالُوا ۚ وَمَا نَقَمُوا إِلَّا أَنْ أَغْنَاهُمُ اللَّهُ وَرَسُولُهُ مِنْ فَضْلِهِ ۚ فَإِنْ يَتُوبُوا يَكُ خَيْرًا لَهُمْ ۖ وَإِنْ يَتَوَلَّوْا يُعَذِّبْهُمُ اللَّهُ عَذَابًا أَلِيمًا فِي الدُّنْيَا وَالْآخِرَةِ ۚ وَمَا لَهُمْ فِي الْأَرْضِ مِنْ وَلِيٍّ وَلَا نَصِيرٍ ﴿٧٤﴾

प्रयोग गरेका थिए, तथा इस्लाम ग्रहण गरेपश्चात् अविश्वास गरेका थिए । तथा तिनीहरू त्यस कुरामाथि ध्यान दिन्थे जुन कुरालाई प्राप्त गर्न (अन्तमा) तिनीहरू असफल हुन्थे । तथा तिनीहरू केवल घृणा पोषण गर्थे किनभने अल्लाह र उनका सन्देशवाहकले आफ्नो अपार समृद्धिबाट उनीहरूलाई सम्पन्न तुल्याएका थिए । अत: यदि तिनीहरूले प्रायश्चित्त गरेमा, त्यो तिनीहरूका निम्ति मङ्गलमय हुनेछ, परन्तु यदि तिनीहरू विमुख भएमा अल्लाहले तिनीहरूलाई यस संसारमा र परलोकमा पीडादायक दण्ड दिनेछन्, तथा यस पृथ्वीमा तिनीहरूको न कोही मित्र हुनेछ न त कोही सहयोगी नै ।

وَمِنْهُمْ مَنْ عَاهَدَ اللَّهَ لَئِنْ آتَانَا مِنْ فَضْلِهِ لَنَصَّدَّقَنَّ وَلَنَكُونَنَّ مِنَ الصَّالِحِينَ ﴿٧٥﴾

७५. तिनीहरूमध्ये केही व्यक्तिहरू यस्ता छन्, जसले अल्लाहसित यसो भन्दै प्रतिज्ञा गरेका छन्, "यदि उनले हामीलाई आफ्नो समृद्धिबाट प्रदान गरे भने, हामी अवश्य नै दान पुण्य गर्नेछौं तथा धार्मिक व्यक्तिहरूमध्येका बन्नेछौं ।"

فَلَمَّا آتَاهُمْ مِنْ فَضْلِهِ بَخِلُوا بِهِ وَتَوَلَّوْا وَهُمْ مُعْرِضُونَ ﴿٧٦﴾

७६. परन्तु जब उनले तिनीहरूलाई आफ्नो समृद्धिबाट प्रदान गरे, तिनीहरू कृपण हुन पुगे, तथा तिनीहरू घृणाप्रकट गर्दै विमुख भए ।

فَأَعْقَبَهُمْ نِفَاقًا فِي قُلُوبِهِمْ إِلَىٰ يَوْمِ يَلْقَوْنَهُ بِمَا أَخْلَفُوا اللَّهَ مَا وَعَدُوهُ وَبِمَا كَانُوا يَكْذِبُونَ ﴿٧٧﴾

७७. अत: त्यसको फलस्वरूप उनले तिनीहरूका हृदयमा कपट उत्पन्न गरे जुन तिनीहरूका हृदयमा त्यसदिनसम्म रहनेछ जब तिनीहरूको साक्षात्कार उनीसँग हुनेछ, कारण तिनीहरूले अल्लाहसितको आफ्नो प्रतिज्ञा भङ्ग गरे तथा तिनीहरूले मिथ्या बोले ।

أَلَمْ يَعْلَمُوا أَنَّ اللَّهَ يَعْلَمُ سِرَّهُمْ وَنَجْوَاهُمْ وَأَنَّ اللَّهَ عَلَّامُ

७८. के तिनीहरूलाई अल्लाहले तिनीहरूका, रहस्यहरू र गुप्त सल्लाहहरूलाई जान्दछन्

الْغُيُوبِ ﴿٧٨﴾

तथा अल्लाह सम्पूर्ण गुप्त कुरा जान्नेहरूमा सर्वश्रेष्ठ छन् भन्ने कुरा थाहा छैन?

اَلَّذِيْنَ يَلْمِزُوْنَ الْمُطَّوِّعِيْنَ مِنَ الْمُؤْمِنِيْنَ فِي الصَّدَقٰتِ وَالَّذِيْنَ لَا يَجِدُوْنَ اِلَّا جُهْدَهُمْ فَيَسْخَرُوْنَ مِنْهُمْ ۚ سَخِرَ اللّٰهُ مِنْهُمْ ۚ وَلَهُمْ عَذَابٌ اَلِيْمٌ ﴿٧٩﴾

७९. ती उनीहरू नै हुन् जसले ती स्वेच्छाले दान दक्षिणा गर्ने विश्वासी व्यक्तिहरूप्रति दोषारोपण गर्छन् तथा ती (विश्वासी) व्यक्तिहरूप्रति पनि जसले आफ्नो पारिश्रमिकबाहेक केही (दान गर्न) सक्दैनन् । अत: तिनीहरू उनीहरूप्रति उपहास गर्छन् । अल्लाहले तिनीहरूलाई तिनीहरूको उपहासको लागि दण्ड दिनेछन्, तथा तिनीहरूका निम्ति पीडादायक दण्ड रहेको छ ।

اِسْتَغْفِرْ لَهُمْ اَوْ لَا تَسْتَغْفِرْ لَهُمْ ۚ اِنْ تَسْتَغْفِرْ لَهُمْ سَبْعِيْنَ مَرَّةً فَلَنْ يَّغْفِرَ اللّٰهُ لَهُمْ ۚ ذٰلِكَ بِاَنَّهُمْ كَفَرُوْا بِاللّٰهِ وَرَسُوْلِهٖ ۚ وَاللّٰهُ لَا يَهْدِي الْقَوْمَ الْفٰسِقِيْنَ ﴿٨٠﴾

८०. चाहे तिमीले तिनीहरूका निम्ति क्षमा याचना गर अथवा क्षमायाचना नगर, यदि तिमीले तिनीहरूका निम्ति सत्तरीपटक क्षमा याचना गर्‍यौ भने पनि अल्लाहले तिनीहरूलाई कदापि क्षमा गर्नेछैनन् । किनभने तिनीहरूले अल्लाह र उनका सन्देशवाहकप्रति अविश्वास गरे । तथा अल्लाहले विश्वासघाती व्यक्तिहरूलाई मार्ग प्रदर्शन गर्दैनन् ।

فَرِحَ الْمُخَلَّفُوْنَ بِمَقْعَدِهِمْ خِلٰفَ رَسُوْلِ اللّٰهِ وَكَرِهُوْٓا اَنْ يُّجَاهِدُوْا بِاَمْوَالِهِمْ وَاَنْفُسِهِمْ فِيْ سَبِيْلِ اللّٰهِ وَقَالُوْا لَا تَنْفِرُوْا فِي الْحَرِّ ۚ قُلْ نَارُ جَهَنَّمَ اَشَدُّ حَرًّا ۚ لَوْ كَانُوْا يَفْقَهُوْنَ ﴿٨١﴾

८१. जुन व्यक्तिहरूले पछाडि रहने (योजना बनाएका थिए) तिनीहरू अल्लाहका सन्देशवाहकको (आज्ञा) विपरितपछि बस्न पाएकोमा प्रसन्न थिए, तथा तिनीहरू अल्लाहका मार्गमा आफ्नो माल र ज्यानद्वारा संघर्ष गर्न रुचाउँदैनथे । तथा तिनीहरू भन्थे, गर्मीमा बाहिर ननिस्क ।" तिमी भन, "नर्कको अग्नि त योभन्दा अधिक उष्णतायुक्त रहेको छ ।" परन्तु तिनीहरूले बुझ्न सकेका भए !

فَلْيَضْحَكُوْا قَلِيْلًا وَّلْيَبْكُوْا كَثِيْرًا ۚ جَزَآءًۢ بِمَا كَانُوْا يَكْسِبُوْنَ ﴿٨٢﴾

८२. तिनीहरूले जे कमाउने गर्थे त्यसको फलस्वरूप तिनीहरूले थोरै हाँस्नु तथा

अधिक रुनु उचित हुन्छ ।

८३. तथा यदि अल्लाहले तिमीलाई तिनीहरूमध्ये एउटा समूहतर्फ फर्काए भने र तिनीहरूले तिमीसँग (युद्धका निम्ति) बाहिर जाने अनुमति मागे भने, तिमी भन, "तिमीहरू कदापि मसित जाने छैनौ तथा मसित मिलेर कदापि कुनै शत्रुविरुद्ध लड्नेछैनौ । तिमीहरूले पहिलापटक पनि (घरमा) बस्न रोजेका थियौ, त्यसकारण अब पनि तिमीहरूपछि रहने व्यक्तिहरूसित मिलेर बस ।"

فَإِنْ رَّجَعَكَ اللّٰهُ إِلٰى طَآئِفَةٍ مِّنْهُمْ
فَاسْتَأْذَنُوْكَ لِلْخُرُوْجِ فَقُلْ لَّنْ
تَخْرُجُوْا مَعِيَ أَبَدًا وَّلَنْ تُقَاتِلُوْا مَعِيَ
عَدُوًّا ۖ إِنَّكُمْ رَضِيْتُمْ بِالْقُعُوْدِ
أَوَّلَ مَرَّةٍ فَاقْعُدُوْا مَعَ الْخَالِفِيْنَ ﴿٨٣﴾

८४. तिनीहरूमध्ये कोही मर्दा त्यसका निम्ति तिमी कदापि (जनाजाको) नमाज नपढ, न त त्यसका चिहाननिर (प्रार्थनाका निम्ति) उभिने गर, कारण तिनीहरूले अल्लाह र उनका सन्देशवाहकप्रति अविश्वास गरे तथा अवज्ञाकारी रहेकै अवस्थामा तिनीहरू मरे ।

وَلَا تُصَلِّ عَلٰى أَحَدٍ مِّنْهُمْ مَّاتَ
أَبَدًا وَّلَا تَقُمْ عَلٰى قَبْرِهٖ ۖ إِنَّهُمْ
كَفَرُوْا بِاللّٰهِ وَرَسُوْلِهٖ وَمَاتُوْا وَ
هُمْ فٰسِقُوْنَ ﴿٨٤﴾

८५. तथा तिनीहरूको धनसम्पत्ति र तिनीहरूका सन्तानहरुले तिमीलाई आश्चर्यचकित नतुल्याउन्, अल्लाह केवल तिनीहरुद्वारा तिनीहरूलाई यस संसारमा दण्ड दिन तथा तिनीहरू अविश्वासी रहेका अवस्थामा नै तिनीहरूको प्राण निस्कियोस् भन्ने चाहन्छन् ।

وَلَا تُعْجِبْكَ أَمْوَالُهُمْ وَأَوْلَادُهُمْ ۖ
إِنَّمَا يُرِيْدُ اللّٰهُ أَنْ يُّعَذِّبَهُمْ بِهَا فِي
الدُّنْيَا وَتَزْهَقَ أَنْفُسُهُمْ وَهُمْ
كٰفِرُوْنَ ﴿٨٥﴾

८६. तथा जब "अल्लाहप्रति विश्वास गर तथा उनका सन्देशवाहकसित मिलेर (अल्लाहका मार्गमा) संघर्ष गर ।" भन्ने (आदेशका साथ) कुनै सूरा: (परिच्छेद) अवतीर्ण हुन्छ तब तिनीहरूमध्ये धनसम्पन्न व्यक्तिहरू तिमीसँग अनुमति माग्छन् र के भन्छन् भने, "हामीलाई (घरमा) बसिरहने व्यक्तिहरूसित बस्ने अनुमति देउ ।"

وَإِذَآ أُنْزِلَتْ سُوْرَةٌ أَنْ اٰمِنُوْا بِاللّٰهِ
وَجَاهِدُوْا مَعَ رَسُوْلِهِ اسْتَأْذَنَكَ
أُولُوا الطَّوْلِ مِنْهُمْ وَقَالُوْا ذَرْنَا
نَكُنْ مَّعَ الْقٰعِدِيْنَ ﴿٨٦﴾

८७. तिनीहरू महिलाहरूसित सम्मिलित भएर (पछि) रहन मन पराउँछन्, तथा तिनीहरूको हृदयलाई मोहरबन्दी गरिएको छ त्यसकारण तिनीहरू बुझ्न सक्दैनन् ।

رَضُوْا بِاَنْ يَّكُوْنُوْا مَعَ الْخَوَالِفِ وَ طُبِعَ عَلٰى قُلُوْبِهِمْ فَهُمْ لَا يَفْقَهُوْنَ ﴿٨٧﴾

८८. परन्तु सन्देशवाहक तथा उनीसित विश्वास स्थापना गर्ने विश्वासीजनहरू (अल्लाहको मार्गमा) आफ्नो धन र ज्यानका साथ संघर्ष गर्छन्, यिनीहरू नै हुन् जसलाई उत्तम वस्तुहरू प्राप्त हुनेछन् तथा यिनीहरू नै कृतार्थ हुनेछन् ।

لٰكِنِ الرَّسُوْلُ وَالَّذِيْنَ اٰمَنُوْا مَعَهٗ جٰهَدُوْا بِاَمْوَالِهِمْ وَ اَنْفُسِهِمْ ؕ وَ اُولٰٓئِكَ لَهُمُ الْخَيْرٰتُ ؗ وَاُولٰٓئِكَ هُمُ الْمُفْلِحُوْنَ ﴿٨٨﴾

८९. अल्लाहले तिनीहरूका निम्ति यस्ता बगैंचाहरू तयार गरेका छन् जसमनि नहरहरू बग्ने गर्छन्, तिनीहरू त्यहाँ सदा बसोबास गर्नेछन् । यही नै सर्वोच्च विजय रहेको छ ।

اَعَدَّ اللّٰهُ لَهُمْ جَنّٰتٍ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ خٰلِدِيْنَ فِيْهَا ؕ ذٰلِكَ الْفَوْزُ الْعَظِيْمُ ﴿٨٩﴾

९०. अरबका जङ्गल निवासीहरूमध्ये बहाना बनाउने व्यक्तिहरू तिनीहरूलाई छुट्कारा दिइयोस् भनी आए । तथा जसले अल्लाह र उनका सन्देशवाहकसमक्ष मिथ्या बोलेका थिए तिनीहरू भने (घरमै) बसिरहे । तिनीहरूमध्ये अविश्वासी व्यक्तिहरूमाथि पीडादायक दण्ड बज्रिनेछ ।

وَ جَآءَ الْمُعَذِّرُوْنَ مِنَ الْاَعْرَابِ لِيُؤْذَنَ لَهُمْ وَ قَعَدَ الَّذِيْنَ كَذَبُوا اللّٰهَ وَ رَسُوْلَهٗ ؕ سَيُصِيْبُ الَّذِيْنَ كَفَرُوْا مِنْهُمْ عَذَابٌ اَلِيْمٌ ﴿٩٠﴾

९१. दुर्बलहरु तथा रोगीहरु तथा ती व्यक्तिहरूमाथि जसले केही खर्च गर्न सक्दैनन् यदि तिनीहरूमा अल्लाह र उनका सन्देशवाहकप्रति पूर्ण सद्भाव रहेको छ भने तिनीहरूमाथि कुनै दोष लाग्नेछैन । जसले पुण्यकार्य गर्छन् तिनीहरूविरुद्ध दोषारोपणको कुनै मार्ग रहेको छैन; तथा अल्लाह परम क्षमाशील, परम दानशील छन्

لَيْسَ عَلَى الضُّعَفَآءِ وَلَا عَلَى الْمَرْضٰى وَ لَا عَلَى الَّذِيْنَ لَا يَجِدُوْنَ مَا يُنْفِقُوْنَ حَرَجٌ اِذَا نَصَحُوْا لِلّٰهِ وَ رَسُوْلِهٖ ؕ مَا عَلَى الْمُحْسِنِيْنَ مِنْ سَبِيْلٍ ؕ وَاللّٰهُ غَفُوْرٌ رَّحِيْمٌ ﴿٩١﴾

९२. न त ती व्यक्तिहरूमाथि, जुन व्यक्तिहरू तिमीसमक्ष तिमीले तिनीहरूलाई सवार गर्नेछौ भनी आएका थिए, (तब)

وَّ لَا عَلَى الَّذِيْنَ اِذَا مَاۤ اَتَوْكَ لِتَحْمِلَهُمْ قُلْتَ لَاۤ اَجِدُ مَاۤ اَحْمِلُكُمْ عَلَيْهِ ۪ تَوَلَّوْا وَّ اَعْيُنُهُمْ

تَفِيضُ مِنَ الدَّمْعِ حَزَنًا أَلَّا يَجِدُوا مَا يُنفِقُونَ ﴿٩٢﴾

तिमीले भनेका थियौ, "मसित कुनै यस्तो (वस्तु) छैन जसमा तिमीहरूलाई सवार गर्न सकूँ" तिनीहरू खर्च गर्न आफूसित केही नरहेको चिन्तामा नेत्रभरी आँसु बगाउँदै फर्किएका थिए ।

إِنَّمَا السَّبِيلُ عَلَى الَّذِينَ يَسْتَأْذِنُونَكَ وَهُمْ أَغْنِيَاءُ ۚ رَضُوا بِأَن يَكُونُوا مَعَ الْخَوَالِفِ وَطَبَعَ اللَّهُ عَلَىٰ قُلُوبِهِمْ فَهُمْ لَا يَعْلَمُونَ ﴿٩٣﴾

९३. जुन व्यक्तिहरू धन-सम्पन्न रहेर पनि तिमीसँग अनुमति माग्छन् केवल तिनीहरूविरुद्ध पकड उचित हुनेछ । तिनीहरू महिलाहरूसित बस्न पाउँदा नै रमाउँछन् । तथा अल्लाहले तिनीहरूको हृदयलाई सिलबन्दी गरेका छन् । अत: तिनीहरू जान्दैनन् ।

يَعْتَذِرُونَ إِلَيْكُمْ إِذَا رَجَعْتُمْ إِلَيْهِمْ ۚ قُل لَّا تَعْتَذِرُوا لَن نُّؤْمِنَ لَكُمْ قَدْ نَبَّأَنَا اللَّهُ مِنْ أَخْبَارِكُمْ ۚ وَسَيَرَى اللَّهُ عَمَلَكُمْ وَرَسُولُهُ ثُمَّ تُرَدُّونَ إِلَىٰ عَالِمِ الْغَيْبِ وَالشَّهَادَةِ فَيُنَبِّئُكُم بِمَا كُنتُمْ تَعْمَلُونَ ﴿٩٤﴾

९४. जब तिमीहरू तिनीहरूतर्फ फर्कन्छौ (तब) तिनीहरू तिमीहरूसमक्ष बहाना बनाउनेछन् । तिमी भन, "बहाना नबनाऊ, हामी तिमीहरूप्रति विश्वास गर्नेछैनौं । अल्लाहले हामीलाई तिमीहरूको वास्तविकताबारे सूचित गरिसकेका छन् । तथा अल्लाह र उनका सन्देशवाहकले (पनि) तिमीहरूको आचरणप्रति दृष्टि राख्नेछन्, त्यसपछि तिमीहरूलाई उनैकहाँ फर्काएर लगिनेछ जसले अदृश्य र दृश्य (कुराहरू)लाई जान्दछन्, तथा उनले तिमीहरूलाई तिमीहरूले गर्ने गरेका कार्यहरूप्रति अवगत गर्नेछन् ।"

سَيَحْلِفُونَ بِاللَّهِ لَكُمْ إِذَا انقَلَبْتُمْ إِلَيْهِمْ لِتُعْرِضُوا عَنْهُمْ ۖ فَأَعْرِضُوا عَنْهُمْ ۖ إِنَّهُمْ رِجْسٌ ۖ وَمَأْوَاهُمْ جَهَنَّمُ جَزَاءً بِمَا كَانُوا يَكْسِبُونَ ﴿٩٥﴾

९५. जब तिमीहरू तिनीहरूतर्फ फर्कनेछौ (तब) तिनीहरू तिमीहरूले उनीहरूलाई (एक्लै) छाडिदिनेछौ कि भनी तिमीहरूसमक्ष अल्लाहको शपथ खानेछन् । अत: तिनीहरूलाई एक्लै छाडिदेऊ । निश्चय नै, तिनीहरू अपवित्र रहेका छन् तथा तिनीहरूले जे कमाउने गर्थे त्यसको (उचित) प्रतिदानस्वरूप नर्क नै तिनीहरूको बास (निर्धारित भएको) छ ।

يَحْلِفُوْنَ لَكُمْ لِتَرْضَوْا عَنْهُمْ ۚ فَاِنْ
تَرْضَوْا عَنْهُمْ فَاِنَّ اللّٰهَ لَا يَرْضٰى
عَنِ الْقَوْمِ الْفٰسِقِيْنَ ﴿٩٦﴾

९६. तिमीहरू तिनीहरूप्रति प्रसन्न हुनेछौ भनी तिनीहरूले तिमीहरूसमक्ष शपथ खानेछन् । परन्तु यदि तिमीहरू तिनीहरूप्रति प्रसन्न भयौ भने (पनि), अल्लाह भने विद्रोही व्यक्तिहरूप्रति प्रसन्न हुनेछैनन् ।

اَلْاَعْرَابُ اَشَدُّ كُفْرًا وَّنِفَاقًا وَّاَجْدَرُ
اَلَّا يَعْلَمُوْا حُدُوْدَ مَاۤ اَنْزَلَ اللّٰهُ عَلٰى
رَسُوْلِهٖ ۗ وَاللّٰهُ عَلِيْمٌ حَكِيْمٌ ﴿٩٧﴾

९७. जङ्गलनिवासी अरबहरू ज्यादै अविश्वासी र कपटी पनि रहेका हुनाले अल्लाहले आफ्ना सन्देशवाहकप्रति अवतीर्ण गरेको विधि-विधानबारे तिनीहरू अनभिज्ञ रहनु स्वाभाविक रहेको छ, तथा अल्लाह सर्वज्ञ, तत्त्वज्ञ छन् ।

وَمِنَ الْاَعْرَابِ مَنْ يَّتَّخِذُ مَا يُنْفِقُ
مَغْرَمًا وَّيَتَرَبَّصُ بِكُمُ الدَّوَآئِرَ ۚ
عَلَيْهِمْ دَآئِرَةُ السَّوْءِ ۗ وَاللّٰهُ
سَمِيْعٌ عَلِيْمٌ ﴿٩٨﴾

९८. तथा जङ्गलनिवासीहरूमध्ये केही यस्ता व्यक्तिहरू छन् जसले (अल्लहका मार्गमा) आफूले गरेको खर्चलाई जरिमाना ठान्छन् तथा तिमीहरूमाथि विपत्ति आइलागोस् भन्ने प्रतिक्षामा रहन्छन् । तिनीहरूमाथि नै महाविपत्ति आइलाग्नेछ । तथा अल्लाह सर्वश्रोता, सर्वज्ञ छन् ।

وَمِنَ الْاَعْرَابِ مَنْ يُّؤْمِنُ بِاللّٰهِ
وَالْيَوْمِ الْاٰخِرِ وَيَتَّخِذُ مَا يُنْفِقُ
قُرُبٰتٍ عِنْدَ اللّٰهِ وَصَلَوٰتِ
الرَّسُوْلِ ۚ اَلَاۤ اِنَّهَا قُرْبَةٌ لَّهُمْ ۚ
سَيُدْخِلُهُمُ اللّٰهُ فِيْ رَحْمَتِهٖ ۚ اِنَّ
اللّٰهَ غَفُوْرٌ رَّحِيْمٌ ﴿٩٩﴾

९९. तथा जङ्गलनिवासी अरबहरूमध्ये केही यस्ता व्यक्तिहरू छन्, जो अल्लाहप्रति र अन्तिम दिनप्रति विश्वास गर्छन् तथा आफूले व्यय गरेको धनलाई अल्लाहको निकटता प्राप्ति र नबीको आशीवार्द (प्राप्तिको) साधनस्वरूप ठान्छन् । सुन ! निश्चय नै, त्यो कार्य तिनीहरूका निम्ति (अल्लाहको) निकटता प्राप्तिको साधन रहेको छ । अल्लाहले शीघ्र नै तिनीहरूलाई आफ्नो करुणा अन्तर्गत गर्नेछन् । निश्चय नै, अल्लाह परम क्षमाशील, परम करुणाशील रहेका छन् ।

وَالسّٰبِقُوْنَ الْاَوَّلُوْنَ مِنَ
الْمُهٰجِرِيْنَ وَالْاَنْصَارِ وَالَّذِيْنَ

१००. तथा (विश्वासीहरूमध्ये) सर्वप्रथम आप्रवासी* र सहयोगी** अग्रणी व्यक्तिहरू

---

* मक्काबाट

اتَّبَعُوْهُمْ بِاِحْسَانٍ ۙ رَّضِيَ اللّٰهُ عَنْهُمْ وَ رَضُوْا عَنْهُ وَ اَعَدَّ لَهُمْ جَنّٰتٍ تَجْرِيْ تَحْتَهَا الْاَنْهٰرُ خٰلِدِيْنَ فِيْهَآ اَبَدًا ؕ ذٰلِكَ الْفَوْزُ الْعَظِيْمُ ﴿١٠٠﴾

तथा तिनीहरूको उत्तमरूपमा अनुसरण गर्ने व्यक्तिहरूमाथि अल्लाह पूर्ण सन्तुष्ट भएका छन् तथा तिनीहरू उनीप्रति पूर्ण सन्तुष्ट भएका छन्, तथा उनले तिनीहरूका निम्ति यस्ता बगैंचाहरू तयार पारेका छन्, जस मनि नहरहरू बग्नेगर्छन् । तिनीहरू त्यहाँ सदा बसोबास गर्नेछन् । यही नै सर्वोत्कृष्ट कृतकार्यता रहेको छ ।

وَ مِمَّنْ حَوْلَكُمْ مِّنَ الْاَعْرَابِ مُنٰفِقُوْنَ ۛؕ وَ مِنْ اَهْلِ الْمَدِيْنَةِ ۛؔ مَرَدُوْا عَلَى النِّفَاقِ ۟ لَا تَعْلَمُهُمْ ؕ نَحْنُ نَعْلَمُهُمْ ؕ سَنُعَذِّبُهُمْ مَّرَّتَيْنِ ثُمَّ يُرَدُّوْنَ اِلٰى عَذَابٍ عَظِيْمٍ ﴿١٠١﴾

१०१. तथा तिमीहरूका छेउछाउमा रहने जङ्गलनिवासी (अरब)हरूमध्ये केही व्यक्तिहरू तथा मदिनाका मानिसहरूमध्ये केही व्यक्तिहरू (पनि) ढोंगी रहेका छन् । तिनीहरू छलकपटप्रति दृढ छन् । तिमी तिनीहरूलाई चिन्दैनौ, हामी तिनीहरूलाई चिन्दछौं । हामी तिनीहरूलाई दुइपटक दण्ड दिनेछौं, त्यसपछि तिनीहरूलाई एउटा ठूलो दण्डको जिम्मा लगाइनेछ ।

وَاٰخَرُوْنَ اعْتَرَفُوْا بِذُنُوْبِهِمْ خَلَطُوْا عَمَلًا صَالِحًا وَّاٰخَرَ سَيِّئًا ؕ عَسَى اللّٰهُ اَنْ يَّتُوْبَ عَلَيْهِمْ ؕ اِنَّ اللّٰهَ غَفُوْرٌ رَّحِيْمٌ ﴿١٠٢﴾

१०२. तथा अन्य (केही यस्ता) व्यक्तिहरू छन् जसले आफ्ना त्रुटिहरूलाई स्वीकारेका छन् । तिनीहरूले एउटा पुण्यकार्यलाई अर्को एउटा यस्तो कार्यसित मिलाए जुन दुष्कार्य थियो । सम्भवत: अल्लाहले तिनीहरूतर्फ कृपादृष्टि गर्नेछन् । निस्सन्देह अल्लाह परम क्षमाशील, परम दानशील रहेका छन् ।

خُذْ مِنْ اَمْوَالِهِمْ صَدَقَةً تُطَهِّرُهُمْ وَ تُزَكِّيْهِمْ بِهَا وَ صَلِّ عَلَيْهِمْ ؕ اِنَّ صَلٰوتَكَ سَكَنٌ لَّهُمْ ؕ وَاللّٰهُ سَمِيْعٌ عَلِيْمٌ ﴿١٠٣﴾

१०३. तिनीहरूको धनबाट दान ग्रहण गर, ताकि तिमी त्यसद्वारा तिनीहरूलाई सफा र पवित्र तुल्याउन सक । तथा तिनीहरूका निम्ति प्रार्थना गर, तिम्रो प्रार्थना निस्सन्देह तिनीहरूका निम्ति शान्तिको स्रोत रहेको छ । तथा अल्लाह सर्वश्रोता, सर्वज्ञ रहेका छन् ।

اَلَمْ يَعْلَمُوْٓا اَنَّ اللّٰهَ هُوَ يَقْبَلُ التَّوْبَةَ عَنْ عِبَادِهٖ وَيَاْخُذُ الصَّدَقٰتِ

१०४. के तिनीहरूलाई अल्लाहले आफ्ना भक्तहरूको प्रायश्चित स्वीकार गर्छन् तथा

** मदिनामा

وَاَنَّ اللّٰهَ هُوَ التَّوَّابُ الرَّحِيْمُ ﴿١٠٤﴾

दान स्वीकार गर्छन् तथा अल्लाह बारम्बार कृपादृष्टि गर्ने गर्छन् तथा उनी परम करुणाशील छन् भन्ने कुरा ज्ञात छैन?

وَقُلِ اعْمَلُوْا فَسَيَرَى اللّٰهُ عَمَلَكُمْ وَ
رَسُوْلُهٗ وَالْمُؤْمِنُوْنَ ۭ وَسَتُرَدُّوْنَ اِلٰى
عٰلِمِ الْغَيْبِ وَالشَّهَادَةِ فَيُنَبِّئُكُمْ بِمَا
كُنْتُمْ تَعْمَلُوْنَ ﴿١٠٥﴾

१०५. तथा तिमी भन, "तिमीहरू जे गर्नसक्छौ गर, निश्चय नै, अल्लाहले तिमीहरूको कार्य हेर्नेछन्, यसैप्रकार उनका सन्देशवाहकले तथा विश्वासीहरूले पनि । तथा तिमीहरूलाई अदृश्य र दृश्य वस्तुहरूका ज्ञातातर्फ फर्कन बाध्य गरिनेछ । त्यसपछि उनले तिमीहरूलाई तिमीहरूले गर्ने गरेका कार्यहरूप्रति अवगत गराउने छन् ।

وَاٰخَرُوْنَ مُرْجَوْنَ لِاَمْرِ اللّٰهِ اِمَّا
يُعَذِّبُهُمْ وَاِمَّا يَتُوْبُ عَلَيْهِمْ ۭ
وَاللّٰهُ عَلِيْمٌ حَكِيْمٌ ﴿١٠٦﴾

१०६. तथा अन्य (केही यस्ता) व्यक्तिहरू (रहेका छन्) जसलाई अल्लाहको निर्देश (प्राप्तिको) प्रतिक्षामा राखिएको छ । उनले चाहेमा तिनीहरूलाई दण्ड दिने निर्णय लिनेछन् अथवा उनले (चाहेमा) तिनीहरूतर्फ कृपादृष्टि गर्नेछन्, तथा अल्लाह सर्वज्ञ, तत्त्वज्ञ रहेका छन् ।

وَالَّذِيْنَ اتَّخَذُوْا مَسْجِدًا ضِرَارًا وَّ
كُفْرًا وَّتَفْرِيْقًۢا بَيْنَ الْمُؤْمِنِيْنَ
وَاِرْصَادًا لِّمَنْ حَارَبَ اللّٰهَ وَرَسُوْلَهٗ مِنْ
قَبْلُ ۭ وَلَيَحْلِفُنَّ اِنْ اَرَدْنَآ اِلَّا الْحُسْنٰى ۭ
وَاللّٰهُ يَشْهَدُ اِنَّهُمْ لَكٰذِبُوْنَ ﴿١٠٧﴾

१०७. तथा (ढोँगी व्यक्तिहरूमध्ये केही) ती व्यक्तिहरू (रहेका छन्) जसले (इस्लामलाई) हानि पुर्‍याउन र अविश्वासलाई (सहयोग) गर्न तथा विश्वासीजनहरूमा मतभेद सृष्टि गर्नका निम्ति, तथा पहिलादेखि नै अल्लाह र उनका सन्देशवाहकविरुद्ध युद्ध प्रारम्भ गरिसकेका व्यक्तिहरूका निम्ति लुक्ने ठाउँ उपलब्ध गराउन एउटा मस्जिद निर्माण गरेका छन् । तथा तिनीहरूले अवश्य (के भनेर) शपथ खानेछन् भने, "भलाइ बाहेक हाम्रो केही उद्देश्य थिएन," परन्तु तिनीहरू निस्सन्देह मिथ्यावादी हुन् भनी अल्लाह साक्षी दिन्छन् ।

لَا تَقُمْ فِيْهِ اَبَدًا ۭ لَمَسْجِدٌ اُسِّسَ
عَلَى التَّقْوٰى مِنْ اَوَّلِ يَوْمٍ اَحَقُّ اَنْ

१०८. त्यसभित्र (नमाजका निम्ति) कदापि खडा नहोउ । जुन मस्जिदको निर्माण प्रथम

تَقُوْمَ فِيْهِ ، فِيْهِ رِجَالٌ يُّحِبُّوْنَ اَنْ يَّتَطَهَّرُوْا ، وَاللّٰهُ يُحِبُّ الْمُطَّهِّرِيْنَ ﴿١٠٨﴾

दिनबाटै धर्मनिष्ठताको आधारमा भएको थियो त्यही यस कुराको अधिक योग्य रहेको छ, जसभित्र तिमी नमाजका निम्ति उभिने गर । त्यसभित्र त्यस्ता व्यक्तिहरू रहेका छन् जो पवित्र बन्न मन पराउँछन् । तथा अल्लाहले तिनै व्यक्तिहरूलाई मन पराउँछन् जसले स्वयम्लाई पवित्र तुल्याउँछन् ।

اَفَمَنْ اَسَّسَ بُنْيَانَهٗ عَلٰى تَقْوٰى مِنَ اللّٰهِ وَرِضْوَانٍ خَيْرٌ اَمْ مَّنْ اَسَّسَ بُنْيَانَهٗ عَلٰى شَفَا جُرُفٍ هَارٍ فَانْهَارَ بِهٖ فِيْ نَارِ جَهَنَّمَ ، وَاللّٰهُ لَا يَهْدِى الْقَوْمَ الظّٰلِمِيْنَ ﴿١٠٩﴾

१०९. जसले आफ्नो जग अल्लाहको डर र उनको प्रसन्नता (प्राप्ति) माथि राख्छ, त्यो व्यक्ति अधिक उत्तम रहेको छ अथवा त्यो (व्यक्ति) जसले आफ्नो जग पानीले भत्काउन लागेको यस्तो डग्मगाउँदो डिलको किनारामा राख्छ जुन उसका साथै नर्कको अग्निमा खस्न पुग्छ? तथा अत्याचार गर्ने व्यक्तिहरूलाई अल्लाहले मार्ग देखाउँदैनन् ।

لَا يَزَالُ بُنْيَانُهُمُ الَّذِيْ بَنَوْا رِيْبَةً فِيْ قُلُوْبِهِمْ اِلَّآ اَنْ تَقَطَّعَ قُلُوْبُهُمْ ، وَاللّٰهُ عَلِيْمٌ حَكِيْمٌ ﴿١١٠﴾

११०. तिनीहरूले खडा गरेको त्यो भवन, तिनीहरूको हृदय फाटेर छियाछिया नहुन्जेलसम्म सदा तिनीहरूले हृदयभित्र बेचैनी र अनिश्चितता सिर्जना गर्ने कारण बन्नेछ । तथा अल्लाह सर्वज्ञ, तत्त्वज्ञ छन् ।

اِنَّ اللّٰهَ اشْتَرٰى مِنَ الْمُؤْمِنِيْنَ اَنْفُسَهُمْ وَاَمْوَالَهُمْ بِاَنَّ لَهُمُ الْجَنَّةَ ، يُقَاتِلُوْنَ فِيْ سَبِيْلِ اللّٰهِ فَيَقْتُلُوْنَ وَيُقْتَلُوْنَ وَعْدًا عَلَيْهِ حَقًّا فِي التَّوْرٰىةِ وَالْاِنْجِيْلِ وَالْقُرْاٰنِ ، وَمَنْ اَوْفٰى بِعَهْدِهٖ مِنَ اللّٰهِ فَاسْتَبْشِرُوْا بِبَيْعِكُمُ الَّذِيْ بَايَعْتُمْ بِهٖ ، وَذٰلِكَ هُوَ الْفَوْزُ الْعَظِيْمُ ﴿١١١﴾

१११. निश्चय नै, अल्लाहले विश्वासीजनबाट तिनीहरूको ज्यान र धन त्यस बगैँचाका सट्टामा खरीद गरिसकेका छन् जुन तिनीहरूलाई प्राप्त हुनेछ, तिनीहरू अल्लाहका मार्गमा युद्ध गर्छन्, तथा तिनीहरू मार्छन् तथा मारिन्छन् – (उनले) स्वयम्प्रति अनिवार्य (गरेको) एउटा यस्तो वचन हो (जुन) तौरात र इन्जिल तथा कुरानमा रहेको छ । तथा अल्लाहभन्दा आफ्नो वचनको पक्का अन्य को हुनसक्छ र? अतः उनीसित तिमीहरूले गरेको सौदाप्रति प्रसन्न होऊ, तथा यही नै सर्वोत्कृष्ट कृतकार्यता रहेको छ ।

اَلتَّآئِبُوْنَ الْعٰبِدُوْنَ الْحٰمِدُوْنَ السَّآئِحُوْنَ الرّٰكِعُوْنَ السّٰجِدُوْنَ

११२. (ती) उनै व्यक्तिहरू (हुन्) जो (प्रायश्चित गर्दै अल्लाहतर्फ) फर्किन्छन्,

الْآمِرُونَ بِالْمَعْرُوفِ وَالنَّاهُونَ عَنِ الْمُنْكَرِ وَالْحَافِظُونَ لِحُدُودِ اللَّهِ ۗ وَبَشِّرِ الْمُؤْمِنِينَ ﴿١١٢﴾

उनको) उपासना गर्छन्, (उनको) महिमा वर्णन गर्छन्, (उनको सेवामा) पृथ्वीको भ्रमण गर्छन्, (अल्लाहसमक्ष) झुक्छन् (नमाजमा) साष्टाङ्ग दण्डवत गर्छन् । पुण्यकार्यको आदेश दिन्छन्, दुष्कर्मबाट रोक्छन् तथा अल्लाहद्वारा (निर्धारित) सीमाहरुको रक्षा गर्छन् । तथा विश्वासीहरूलाई तिमी शुभसन्देश देउ ।

مَا كَانَ لِلنَّبِيِّ وَالَّذِينَ آمَنُوا أَنْ يَسْتَغْفِرُوا لِلْمُشْرِكِينَ وَلَوْ كَانُوا أُولِي قُرْبَىٰ مِنْ بَعْدِ مَا تَبَيَّنَ لَهُمْ أَنَّهُمْ أَصْحَابُ الْجَحِيمِ ﴿١١٣﴾

११३. नबी तथा विश्वासी व्यक्तिहरूले मूर्तिपूजकहरूका लागि– चाहे तिनीहरू नातेदार नै किन नहुन्– उनीहरूप्रति तिनीहरू नर्कका निवासी रहेको स्पष्ट भएपश्चात् (अल्लाहसित) क्षमादानको प्रार्थना गर्नु उचित हुनेछैन ।

وَمَا كَانَ اسْتِغْفَارُ إِبْرَاهِيمَ لِأَبِيهِ إِلَّا عَنْ مَوْعِدَةٍ وَعَدَهَا إِيَّاهُ فَلَمَّا تَبَيَّنَ لَهُ أَنَّهُ عَدُوٌّ لِلَّهِ تَبَرَّأَ مِنْهُ ۚ إِنَّ إِبْرَاهِيمَ لَأَوَّاهٌ حَلِيمٌ ﴿١١٤﴾

११४. तथा इब्राहिमले आफ्ना पिताका निम्ति क्षमा याचना गर्नुको कारण केवल त्यो प्रतिश्रुति थियो जुन उनले उनीलाई (पितालाई) दिएका थिए, परन्तु जब उनीप्रति तिनी अल्लाहका शत्रु थिए भन्ने कुरा स्पष्ट हुन गयो (तब), उनले उनीसित आफ्नो सम्बन्ध विच्छेद गरे । निश्चय नै, इब्राहिम अति कोमल हृदयी, धैर्यशील थिए ।

وَمَا كَانَ اللَّهُ لِيُضِلَّ قَوْمًا بَعْدَ إِذْ هَدَاهُمْ حَتَّىٰ يُبَيِّنَ لَهُمْ مَا يَتَّقُونَ ۚ إِنَّ اللَّهَ بِكُلِّ شَيْءٍ عَلِيمٌ ﴿١١٥﴾

११५. अल्लाहले कुनै जातिलाई मार्ग प्रदर्शनपश्चात् जुन कुराहरूबाट तिनीहरूले बच्नु अनिवार्य रहेको छ ती कुराहरू प्रष्ट नपारेसम्म तिनीहरूलाई पथभ्रष्ट ठहराउनु उनको (मर्यादा) विपरित रहेको छ । निश्चय नै, अल्लाह हरेक वस्तुलाई राम्ररी जान्दछन्

إِنَّ اللَّهَ لَهُ مُلْكُ السَّمَاوَاتِ وَالْأَرْضِ ۖ يُحْيِي وَيُمِيتُ ۚ وَمَا لَكُمْ مِنْ دُونِ اللَّهِ مِنْ وَلِيٍّ وَلَا نَصِيرٍ ﴿١١٦﴾

११६. निश्चय नै, आकाशमण्डल र पृथ्वीमाथि अल्लाहलाई शासनाधिकार प्राप्त छ । उनी जीवनदान गर्छन् तथा मृत्यु प्रदान गर्छन् । तथा अल्लाहबाहेक न तिमीहरूको कोही मित्र रहेको छ न त सहयोगी नै ।

لَقَدْ تَّابَ اللّٰهُ عَلَى النَّبِيِّ وَالْمُهٰجِرِيْنَ وَالْاَنْصَارِ الَّذِيْنَ اتَّبَعُوْهُ فِيْ سَاعَةِ الْعُسْرَةِ مِنْۢ بَعْدِ مَا كَادَ يَزِيْغُ قُلُوْبُ فَرِيْقٍ مِّنْهُمْ ثُمَّ تَابَ عَلَيْهِمْ ؕ اِنَّهٗ بِهِمْ رَءُوْفٌ رَّحِيْمٌ ﴿١١٧﴾

११७. अल्लाहले निस्सन्देह नबीप्रति तथा आप्रवासीहरूप्रति र सहयोगीहरूप्रति जसले त्यस सङ्कटका घडीमा उनको अनुसरण गरेका थिए, कृपादृष्टि गरेका छन् । जब तिनीहरूमध्ये एउटा समूहको (भने) केही मात्रामा हृदय टेढिन पुगेको थियो, उनले पुनः तिनीहरूतर्फ कृपादृष्टि गरे । निश्चय नै, उनी तिनीहरूप्रति परम दयालु करुणाशील, रहेका छन् ।

وَّعَلَى الثَّلٰثَةِ الَّذِيْنَ خُلِّفُوْا ؕ حَتّٰۤى اِذَا ضَاقَتْ عَلَيْهِمُ الْاَرْضُ بِمَا رَحُبَتْ وَضَاقَتْ عَلَيْهِمْ اَنْفُسُهُمْ وَظَنُّوْۤا اَنْ لَّا مَلْجَاَ مِنَ اللّٰهِ اِلَّاۤ اِلَيْهِ ؕ ثُمَّ تَابَ عَلَيْهِمْ لِيَتُوْبُوْا ؕ اِنَّ اللّٰهَ هُوَ التَّوَّابُ الرَّحِيْمُ ﴿١١٨﴾

११८. तथा तीपछि (छाडिए) का तीनजना व्यक्तिहरू, तिनीहरूका निम्ति भने पृथ्वी आफ्नो (पूर्ण) विस्तृतता रहँदा रहँदै पनि अति संकीर्ण देखिन पुग्यो, तथा तिनीहरूको आत्मा (पनि) तिनीहरूका निम्ति सङ्कीर्ण भएको थियो, तथा अल्लाहबाट (बच्ने) उनीबाहेक अन्य कुनै आश्रयस्थल छैन भन्ने कुरा तिनीहरूले बुझे । त्यसपछि उनले तिनीहरूतर्फ कृपादृष्टि गरे ताकि तिनीहरू पनि (उनीतर्फ) फर्किउन् । निश्चय नै, ती अल्लाह नै हुन् जो बारम्बार (कृपा) दृष्टिकर्ता तथा परम करुणाशील छन् ।

يٰۤاَيُّهَا الَّذِيْنَ اٰمَنُوا اتَّقُوا اللّٰهَ وَكُوْنُوْا مَعَ الصّٰدِقِيْنَ ﴿١١٩﴾

११९. हे विश्वासीजन हो ! अल्लाहप्रति डराऊ तथा सत्यनिष्ठ व्यक्तिहरू बन ।

مَا كَانَ لِاَهْلِ الْمَدِيْنَةِ وَمَنْ حَوْلَهُمْ مِّنَ الْاَعْرَابِ اَنْ يَّتَخَلَّفُوْا عَنْ رَّسُوْلِ اللّٰهِ وَلَا يَرْغَبُوْا بِاَنْفُسِهِمْ عَنْ نَّفْسِهٖ ؕ ذٰلِكَ بِاَنَّهُمْ لَا يُصِيْبُهُمْ ظَمَاٌ وَّلَا نَصَبٌ وَّلَا مَخْمَصَةٌ فِيْ سَبِيْلِ اللّٰهِ وَلَا يَطَـُٔوْنَ مَوْطِئًا يَّغِيْظُ الْكُفَّارَ وَلَا يَنَالُوْنَ مِنْ عَدُوٍّ نَّيْلًا اِلَّا كُتِبَ لَهُمْ بِهٖ عَمَلٌ صَالِحٌ ؕ اِنَّ اللّٰهَ لَا يُضِيْعُ اَجْرَ الْمُحْسِنِيْنَ ﴿١٢٠﴾

१२०. मदिना निवासी तथा तिनीहरूका छेउछाउ बसोबास गर्ने जङ्गलनिवासी अरबहरूका निम्ति अल्लाहका सन्देशवाहकलाई छाडी पछि रहनु अथवा उनको जीवनमाथि आफ्नो जीवनलाई प्राथमिकता दिनु उचित थिएन । किनभने अल्लाहका मार्गमा तिनीहरूलाई न प्यासले, न दुःखले न ता भोकले सताउँछ, न ता तिनीहरू अविश्वासीहरूलाई क्रोधित तुल्याउने गरी कुनै मार्गमा हिँड्ने गर्छन् अथवा न ता शत्रुमाथि तिनीहरूले विजय प्राप्त गर्छन् परन्तु ती (सबै) कार्यहरूका बदलामा तिनीहरूका नाममा एउटा

पुण्यकार्य लेखिएको छ । निश्चय नै, अल्लाहले पुण्यकार्य गर्ने व्यक्तिहरूको प्रतिदान व्यर्थ हुन दिँदैनन् ।

१२१. तिनीहरूले कुनै यस्तो सानु अथवा ठूलो धन राशि खर्च गर्दैमन्, न त तिनीहरू कुनै यस्तो उपत्यकालाई अतिक्रमण नै गर्छन्, परन्तु त्यो तिनीहरूका निम्ति लेखिएको छ ताकि तिनीहरूले गरेका कार्यको अल्लाहले उत्तम प्रतिदान प्रदान गरून् ।

وَلَا يُنْفِقُوْنَ نَفَقَةً صَغِيْرَةً وَّلَا كَبِيْرَةً وَّلَا يَقْطَعُوْنَ وَادِيًا اِلَّا كُتِبَ لَهُمْ لِيَجْزِيَهُمُ اللّٰهُ اَحْسَنَ مَا كَانُوْا يَعْمَلُوْنَ ﴿١٢١﴾

१२२. विश्वासीजनहरूका निम्ति सबैजना एकैसाथ मिलेर प्रस्थान गर्नु सम्भव छैन । त्यसकारण, तिनीहरूका प्रत्येक जमातबाट एउटा समूह धर्मलाई राम्ररी बुझ्नका निम्ति किन निस्कँदैन ताकि तिनीहरूले आफ्ना मानिसहरूलाई सावधान गर्न सकून् जब तिनीहरू (ज्ञान प्राप्त गरी) उनीहरूतर्फ फर्कन्छन्, ताकि उनीहरू (पापबाट) बच्न सकून् ?

وَمَا كَانَ الْمُؤْمِنُوْنَ لِيَنْفِرُوْا كَآفَّةً ؕ فَلَوْلَا نَفَرَ مِنْ كُلِّ فِرْقَةٍ مِّنْهُمْ طَآئِفَةٌ لِّيَتَفَقَّهُوْا فِى الدِّيْنِ وَلِيُنْذِرُوْا قَوْمَهُمْ اِذَا رَجَعُوْۤا اِلَيْهِمْ لَعَلَّهُمْ يَحْذَرُوْنَ ﴿١٢٢﴾

१२३. हे विश्वासीजन हो ! तिमीहरूका निकटमा रहने अविश्वासीहरूसित युद्ध गर ताकि तिनीहरूले तिमीहरूभित्र अतुलनीय दृढता पाऊन्, तथा अल्लाह धर्मनिष्ठ व्यक्तिहरूसित रहेका छन् भनी जान ।

يٰۤاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا قَاتِلُوا الَّذِيْنَ يَلُوْنَكُمْ مِّنَ الْكُفَّارِ وَلْيَجِدُوْا فِيْكُمْ غِلْظَةً ؕ وَاعْلَمُوْۤا اَنَّ اللّٰهَ مَعَ الْمُتَّقِيْنَ ﴿١٢٣﴾

१२४. तथा जब कुनै सूरः (अध्याय) अवतीर्ण गरिन्छ, तिनीहरूमध्ये केही व्यक्तिहरू भन्छन्, " यस सूरःले तिमीहरूमध्ये कसको विश्वास अभिवृद्धि गरेको छ त? परन्तु ती विश्वासी व्यक्तिहरूको विश्वासलाई नै यसले बढाउँछ तथा तिनीहरू आनन्दित हुन्छन् ।

وَاِذَا مَاۤ اُنْزِلَتْ سُوْرَةٌ فَمِنْهُمْ مَّنْ يَّقُوْلُ اَيُّكُمْ زَادَتْهُ هٰذِهٖۤ اِيْمَانًا ۚ فَاَمَّا الَّذِيْنَ اٰمَنُوْا فَزَادَتْهُمْ اِيْمَانًا وَّهُمْ يَسْتَبْشِرُوْنَ ﴿١٢٤﴾

१२५. परन्तु जुन व्यक्तिहरूका हृदयमा रोग रहेको छ, तिनीहरूमा रहेको फोहोर माथि यसले (अझ) फोहोर थप्छ, तथा

وَاَمَّا الَّذِيْنَ فِيْ قُلُوْبِهِمْ مَّرَضٌ فَزَادَتْهُمْ رِجْسًا اِلٰى رِجْسِهِمْ وَمَاتُوْا

وَهُمْ كٰفِرُوْنَ ﴿١٢٥﴾

अविश्वासी रहेको अवस्थामा नै तिनीहरू मर्छन् ।

اَوَلَا يَرَوْنَ اَنَّهُمْ يُفْتَنُوْنَ فِيْ كُلِّ عَامٍ مَّرَّةً اَوْ مَرَّتَيْنِ ثُمَّ لَا يَتُوْبُوْنَ وَلَا هُمْ يَذَّكَّرُوْنَ ﴿١٢٦﴾

१२६. तिनीहरूलाई प्रत्येक वर्ष एकपटक अथवा दुईपटक जाँच्ने गरिन्छ भन्ने कुरा के तिनीहरूलाई थाहा छैन र? तथापि तिनीहरू न प्रायश्चित्त गर्छन् न त अर्ती नै लिन्छन् ।

وَاِذَا مَآ اُنْزِلَتْ سُوْرَةٌ نَّظَرَ بَعْضُهُمْ اِلٰى بَعْضٍ ؕ هَلْ يَرٰىكُمْ مِّنْ اَحَدٍ ثُمَّ انْصَرَفُوْا ؕ صَرَفَ اللّٰهُ قُلُوْبَهُمْ بِاَنَّهُمْ قَوْمٌ لَّا يَفْقَهُوْنَ ﴿١٢٧﴾

१२७. तथा जब कुनै सूरा: (अध्याय) अवतीर्ण हुन्छ, तिनीहरू (के भन्दै) परस्पर एक अर्कालाई हेर्छन् (भने), "कसैले तिमीहरूलाई देख्दै त छैन?" त्यसपछि तिनीहरू फर्कन्छन् । अल्लाहले तिनीहरूका हृदयलाई विमुख तुल्याएका छन्, किनभने तिनीहरू बुद्धिहीन व्यक्तिहरू रहेका छन् ।

لَقَدْ جَآءَكُمْ رَسُوْلٌ مِّنْ اَنْفُسِكُمْ عَزِيْزٌ عَلَيْهِ مَا عَنِتُّمْ حَرِيْصٌ عَلَيْكُمْ بِالْمُؤْمِنِيْنَ رَءُوْفٌ رَّحِيْمٌ ﴿١٢٨﴾

१२८. निश्चय नै, तिमीहरूसमक्ष तिमीहरूमध्येकै एकजना सन्देशवाहकको आगमन भएको छ, तिमीहरूमाथि आउने सङ्कटले उनलाई अति दुखित तुल्याउँछ, तिमीहरूको (भलाइका उनी) अत्यन्तै अभिलाषी छन्, (तथा उनी) विश्वासीहरूप्रति (अत्यन्तै) स्नेहशील दयालु रहेका छन् ।

فَاِنْ تَوَلَّوْا فَقُلْ حَسْبِيَ اللّٰهُ ۖ لَآ اِلٰهَ اِلَّا هُوَ ؕ عَلَيْهِ تَوَكَّلْتُ وَهُوَ رَبُّ الْعَرْشِ الْعَظِيْمِ ﴿١٢٩﴾

१२९. परन्तु यदि तिनीहरू विमुख भएमा तिमी भन, "अल्लाह मेरा निम्ति पर्याप्त रहेका छन् । उनीबाहेक अन्य कोही उपास्य छैन । उनीप्रति नै म भरोसा राख्दछु, तथा उनी नै महान सिंहासनका अधिपति रहेका छन् ।"

سُورَةُ يُونُسَ مَكِّيَّةٌ وَهِيَ مَعَ الْبَسْمَلَةِ مِائَةٌ وَّعَشْرُ اٰيٰتٍ وَّاَحَدَ عَشَرَ رُكُوْعًا

## यूनुस
(हिजरतअघि अवतरित)

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

२. अलिफ् लाम रा*, यी ज्ञानले परिपूर्ण पुस्तकका आयातहरू हुन् ।

الٓرٰ تِلْكَ اٰيٰتُ الْكِتٰبِ الْحَكِيْمِ ②

३. के मानिसहरूका निम्ति हामीले तिनीहरूमध्येकै एकजना व्यक्तिलाई "मानवजातिलाई सावधान गर तथा विश्वासी व्यक्तिहरूलाई तिनीहरूका निम्ति तिनीहरूका प्रतिपालकका जुनाफमा सत्यको दर्जा रहेको छ भनी शुभसन्देश देउ", भनी आकाशवाणी गर्नु आश्चर्य (को विषय) हो त? अविश्वासी व्यक्तिहरू भन्छन्, "निश्चय नै यो त एउटा खुल्लम-खुल्ला जादुगर हो ।"

اَكَانَ لِلنَّاسِ عَجَبًا اَنْ اَوْحَيْنَآ اِلٰى رَجُلٍ مِّنْهُمْ اَنْ اَنْذِرِ النَّاسَ وَبَشِّرِ الَّذِيْنَ اٰمَنُوْٓا اَنَّ لَهُمْ قَدَمَ صِدْقٍ عِنْدَ رَبِّهِمْ ۚ قَالَ الْكٰفِرُوْنَ اِنَّ هٰذَا لَسٰحِرٌ مُّبِيْنٌ ③

४. वस्तुतः, तिमीहरूका प्रतिपालक तिनै अल्लाह हुन् जसले छ अवधिमा आकाशमण्डल र पृथ्वीको सृष्टि गरे, त्यसपछि उनी स्वयम् सिंहासनमाथि विराजमान भए; तथा उनी प्रत्येक वस्तुलाई नियन्त्रण गर्छन् । उनको अनुमतिविना कोही (उनीसमक्ष) सिफारिशकर्ता बन्न सक्दैन । यिनी नै तिमीहरूका प्रतिपालक अल्लाह हुन्, त्यस कारण उनकै उपासना गर । तब के तिमीहरू उपदेश लिँदैनौं त?

اِنَّ رَبَّكُمُ اللّٰهُ الَّذِيْ خَلَقَ السَّمٰوٰتِ وَالْاَرْضَ فِيْ سِتَّةِ اَيَّامٍ ثُمَّ اسْتَوٰى عَلَى الْعَرْشِ يُدَبِّرُ الْاَمْرَ ۚ مَا مِنْ شَفِيْعٍ اِلَّا مِنْ بَعْدِ اِذْنِهٖ ۚ ذٰلِكُمُ اللّٰهُ رَبُّكُمْ فَاعْبُدُوْهُ ۚ اَفَلَا تَذَكَّرُوْنَ ④

५. तिमीहरू सबैले उनीतर्फ नै फर्कनु छ । अल्लाहको वचन (नितान्त) सत्य रहेको छ । निश्चय नै उनले सृष्टिको

اِلَيْهِ مَرْجِعُكُمْ جَمِيْعًا ۚ وَعْدَ اللّٰهِ حَقًّا ۚ اِنَّهٗ يَبْدَؤُا الْخَلْقَ ثُمَّ يُعِيْدُهٗ

* म सर्वसाक्षी अल्लाह हुँ ।

शुभारम्भ गरे; त्यसपछि उनैले त्यसलाई दोहोऱ्याउँछन् ताकि उनले न्यायका साथ विश्वास स्थापना गर्ने र पुण्य कार्य गर्ने व्यक्तिहरूलाई पुरस्कृत गर्न सकून्; तथा अविश्वासी व्यक्तिहरूलाई तिनीहरूको अविश्वासका कारण पिउनका निम्ति उम्लिदै गरेको पानी तथा पीडादायक दण्ड मिल्नेछ ।

لِيَجْزِيَ الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ بِالْقِسْطِ ؕ وَالَّذِيْنَ كَفَرُوْا لَهُمْ شَرَابٌ مِّنْ حَمِيْمٍ وَّعَذَابٌ اَلِيْمٌۢ بِمَا كَانُوْا يَكْفُرُوْنَ ۝

६. ती उनी नै हुन् जसले सूर्यलाई प्रकाशको स्रोतस्वरूप तथा चन्द्रमालाई ज्योति स्वरूप बनाए, तथा त्यसका निम्ति बिसौनीहरू निर्धारित गरे ताकि तिमीहरूलाई सालहरूको सङ्ख्या तथा (समयको) गणनाबारे ज्ञान मिलोस् । अल्लाहले यसलाई सिर्जना गरेका छैनन् परन्तु सत्यका साथ । उनी ती व्यक्तिहरूका निम्ति चिह्नहरूको विस्तृतरूपमा विवरण दिन्छन् जो ज्ञानवान छन् ।

هُوَ الَّذِيْ جَعَلَ الشَّمْسَ ضِيَآءً وَّالْقَمَرَ نُوْرًا وَّقَدَّرَهٗ مَنَازِلَ لِتَعْلَمُوْا عَدَدَ السِّنِيْنَ وَالْحِسَابَ ؕ مَا خَلَقَ اللّٰهُ ذٰلِكَ اِلَّا بِالْحَقِّ ۚ يُفَصِّلُ الْاٰيٰتِ لِقَوْمٍ يَّعْلَمُوْنَ ۝

७. निस्सन्देह, रात र दिनको परस्पर अनुवर्तनमा तथा आकाशमण्डल र पृथ्वीमा अल्लाहद्वारा सिर्जित सम्पूर्ण वस्तुहरूमा अल्लाहप्रति डर राख्ने व्यक्तिहरूका निम्ति चिह्नहरू रहेका छन्

اِنَّ فِي اخْتِلَافِ الَّيْلِ وَالنَّهَارِ وَمَا خَلَقَ اللّٰهُ فِي السَّمٰوٰتِ وَالْاَرْضِ لَاٰيٰتٍ لِّقَوْمٍ يَّتَّقُوْنَ ۝

८. ती व्यक्तिहरू जसले हामीसित हुने साक्षात्कारप्रति आशा राख्दैनन् तथा यसै सांसारिक जीवनप्रति सन्तुष्ट छन् र त्यसैबाट शान्ति अनुभव गर्छन्, तथा ती व्यक्तिहरू जसले हाम्रा चिह्नहरूको वास्ता गर्दैनन्,

اِنَّ الَّذِيْنَ لَا يَرْجُوْنَ لِقَآءَنَا وَرَضُوْا بِالْحَيٰوةِ الدُّنْيَا وَاطْمَاَنُّوْا بِهَا وَالَّذِيْنَ هُمْ عَنْ اٰيٰتِنَا غٰفِلُوْنَ ۝

९. यी तिनीहरू नै हुन् जसको बास तिनीहरूको कमाइका कारण अग्नि रहेको छ।

اُولٰٓئِكَ مَاْوٰىهُمُ النَّارُ بِمَا كَانُوْا يَكْسِبُوْنَ ۝

१०. परन्तु जसले विश्वास गर्छन् र पुण्यकार्य गर्छन् तिनीहरूलाई तिनीहरूको विश्वासका कारण तिनीहरूका प्रतिपालकले मार्ग प्रदर्शन गर्नेछन् । सुख-

اِنَّ الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ يَهْدِيْهِمْ رَبُّهُمْ بِاِيْمَانِهِمْ ۚ تَجْرِيْ مِنْ تَحْتِهِمُ الْاَنْهٰرُ فِيْ جَنّٰتِ

النعيم ⑩

शान्तिपूर्ण बगैंचाहरू भित्र जस अन्तर्गत नहरहरू बग्नेछन् ।

دعوىهم فيها سبحنك اللهم وتحيتهم فيها سلم وءاخر دعوىهم أن الحمد لله رب العلمين ⑩

११. त्यहाँ तिनीहरूको के प्रार्थना हुनेछ भने, "हे अल्लाह ! तिमी परम पवित्र रहेका छौ ।" तथा त्यहाँ तिनीहरूको शुभकामना हुनेछ 'शान्ति' तथा तिनीहरूको प्रार्थनाको अन्त हुनेछ, "सम्पूर्ण प्रशंसाका स्वामी विश्व-ब्रह्माण्डका मालिक अल्लाह नै रहेका छन् ।"

ولو يعجل الله للناس الشر استعجالهم بالخير لقضي إليهم أجلهم فنذر الذين لا يرجون لقاءنا في طغينهم يعمهون ⑪

१२. तथा यदि अल्लाहले -पनि) मानिसहरूका निम्ति -तिनीहरूले कमाएको) दुष्कार्यको कुफल प्रकटमा तिनीहरूले धन (प्राप्ति) मा हडबड गरेझैं हतार गरेका भए त तिनीहरूको -जीवनको) म्यादको अन्त तिनीहरूप्रति पहिला नै प्रकट गरिसकिन्थ्यो । परन्तु हामी ती व्यक्तिहरूलाई जसले हामीसित हुने साक्षात्कारप्रति आशा राख्दैनन्, आफ्नो सीमोल्लङ्घनतामा भौंतारिन छाडिदिन्छौं ।

وإذا مس الإنسن الضر دعانا لجنبه أو قاعدا أو قائما فلما كشفنا عنه ضره مر كأن لم يدعنا إلى ضر مسه كذلك زين للمسرفين ما كانوا يعملون ⑫

१३. तथा जब मानिसमाथि सङ्कट आइलाग्छ, उसले हामीलाई ढल्केर वा बसेर अथवा उभिएर पुकार्छ, परन्तु जब हामी त्यसलाई सङ्कटबाट मुक्त गर्छौं, (तब) त्यो व्यक्ति यसरी अघि बढ्छ मानौं, त्यसले उसमाथि आइपरेको सङ्कटका निम्ति हामीलाई कहिल्यै पुकारेकै थिएन । यसै प्रकार सीमोल्लङ्घनकारीहरूलाई तिनीहरूका क्रिया- कलापहरू तिनीहरूका दृष्टिमा सुन्दर तुल्याएर देखाइएको छ ।

ولقد أهلكنا القرون من قبلكم لما ظلموا وجاءتهم رسلهم بالبينت وما كانوا ليؤمنوا كذلك نجزي القوم المجرمين ⑬

१४. तथा हामीले तिमीहरूभन्दा पहिलाका धेरै पिँढीहरूलाई नष्ट गर्‍यौं जब तिनीहरूले सीमोल्लङ्घन गरे, जबकि (त्यसअघि) तिनीहरूसमक्ष स्पष्ट चिह्नहरू लिएर सन्देशवाहकहरू आएका थिए परन्तु तिनीहरूले विश्वास गरेनन् ।

यसै प्रकार हामी अपराध गर्ने व्यक्तिहरूलाई प्रतिदान दिने गर्छौं ।

१४. त्यसपछि, तिमीहरूलाई हामीले तिनीहरू पश्चात् पृथ्वीमा (तिनीहरूका) उत्तराधिकारी बनायौं, ताकि हामी तिमीहरू कस्तो कर्म गर्छौ हेर्न सकौं ।

ثُمَّ جَعَلْنٰكُمْ خَلٰٓئِفَ فِي الْاَرْضِ مِنْۢ بَعْدِهِمْ لِنَنْظُرَ كَيْفَ تَعْمَلُوْنَ ﴿١٤﴾

१६. तथा जब तिनीहरूसमक्ष हाम्रा स्पष्ट चिह्नहरूको पाठ गरिन्छ (तब) हामीसित साक्षात्कारको आशा नराख्ने व्यक्तिहरू भन्छन्, "यसबाहेक एउटा अर्कै कुरान ल्याउ अथवा यसैलाई परिवर्तन गर ।" तिमी भन, "यसलाई आफ्नो इच्छानुसार परिवर्तन गर्नु मेरा निम्ति सम्भव छैन । जुन कुरा मप्रति अवतीर्ण गरिन्छ, म त केवल त्यसैको अनुसरण गर्छु । निस्सन्देह, यदि मैले आफ्ना प्रतिपालकको अवज्ञा गरें भने, त्यस असाधारण दिनको दण्डप्रति म डराउँछु ।"

وَاِذَا تُتْلٰى عَلَيْهِمْ اٰيَاتُنَا بَيِّنٰتٍ ۙ قَالَ الَّذِيْنَ لَا يَرْجُوْنَ لِقَآءَنَا ائْتِ بِقُرْاٰنٍ غَيْرِ هٰذَآ اَوْ بَدِّلْهُ ؕ قُلْ مَا يَكُوْنُ لِيْٓ اَنْ اُبَدِّلَهٗ مِنْ تِلْقَآئِ نَفْسِيْ ۚ اِنْ اَتَّبِعُ اِلَّا مَا يُوْحٰٓى اِلَيَّ ۚ اِنِّيْٓ اَخَافُ اِنْ عَصَيْتُ رَبِّيْ عَذَابَ يَوْمٍ عَظِيْمٍ ﴿١٥﴾

१७. तिमी भन, "यदि अल्लाहको (त्यस्तो) इच्छा रहेको भए त, तिमीहरूसमक्ष म त्यसको पाठ गर्ने नै थिइँन, न त उनले तिमीहरूलाई त्यसबाट अवगत गराउने थिए । यसअघि मेरो (समस्त) जीवनकाल तिमीहरूबीच मै बितेको छ । फेरि पनि के तिमीहरू बुझ्दैनौ त?"

قُلْ لَّوْ شَآءَ اللّٰهُ مَا تَلَوْتُهٗ عَلَيْكُمْ وَلَآ اَدْرٰىكُمْ بِهٖ ۖ فَقَدْ لَبِثْتُ فِيْكُمْ عُمُرًا مِّنْ قَبْلِهٖ ؕ اَفَلَا تَعْقِلُوْنَ ﴿١٦﴾

१८. जसले अल्लाहविरुद्ध, मिथ्या गढ्छ अथवा जसले उनका चिह्नहरूप्रति मिथ्यास्वरूप व्यवहार गर्छ त्यो व्यक्तिभन्दा अधिक असभ्यतापूर्वक अरू कसले न्यायलाई तोड्छ र? निश्चय नै, अपराधीहरू कदापि कृतकार्य हुनेछैनन् ।

فَمَنْ اَظْلَمُ مِمَّنِ افْتَرٰى عَلَى اللّٰهِ كَذِبًا اَوْ كَذَّبَ بِاٰيٰتِهٖ ؕ اِنَّهٗ لَا يُفْلِحُ الْمُجْرِمُوْنَ ﴿١٧﴾

१९. तथा तिनीहरू अल्लाहलाई छाडी त्यसको उपासना गर्छन्, जसले न तिनीहरूको हानि गर्न सक्छ न त लाभ नै, तथा तिनीहरू भन्छन्, "यिनीहरू अल्लाहसमक्ष हाम्रा (निम्ति)

وَيَعْبُدُوْنَ مِنْ دُوْنِ اللّٰهِ مَا لَا يَضُرُّهُمْ وَلَا يَنْفَعُهُمْ وَيَقُوْلُوْنَ هٰٓؤُلَآءِ شُفَعَآؤُنَا عِنْدَ اللّٰهِ ؕ قُلْ اَتُنَبِّئُوْنَ اللّٰهَ بِمَا لَا يَعْلَمُ فِي السَّمٰوٰتِ وَلَا فِي

الْأَرْضِ ۚ سُبْحَٰنَهُۥ وَتَعَٰلَىٰ عَمَّا يُشْرِكُونَ ⑱

सिफारिशकर्ताहरू रहेका छन् ।" तिमी भन, "के तिमीहरू अल्लाहलाई त्यस कुराबारे अवगत गराउँछौ जसबारे उनलाई न आकाशमण्डलमा न त पृथ्वीमा नै ज्ञात छ? उनी गौरवमय छन् जसलाई तिनीहरू (उनका) सहभागी ठहऱ्याउँछन् त्यसबाट अति उच्च रहेका छन् ।

وَمَا كَانَ ٱلنَّاسُ إِلَّآ أُمَّةً وَٰحِدَةً فَٱخْتَلَفُوا۟ ۚ وَلَوْلَا كَلِمَةٌ سَبَقَتْ مِن رَّبِّكَ لَقُضِىَ بَيْنَهُمْ فِيمَا فِيهِ يَخْتَلِفُونَ ⑲

२०. तथा मानवजाति एउटै सम्प्रदाय (अन्तर्गत) थिए, त्यसपछि तिनीहरूले मतभेद गरे, तथा यदि तिम्रा प्रतिपालकका तर्फबाट एउटा कुरा पहिला नै गुज्रिनसकेको भए ता जुन कुरामा तिनीहरू मतभेद राख्थे त्यसैअनुसार तिनीहरूको भाग्यमा मोहोर लगाइने थियो ।

وَيَقُولُونَ لَوْلَآ أُنزِلَ عَلَيْهِ ءَايَةٌ مِّن رَّبِّهِۦ ۖ فَقُلْ إِنَّمَا ٱلْغَيْبُ لِلَّهِ فَٱنتَظِرُوٓا۟ إِنِّى مَعَكُم مِّنَ ٱلْمُنتَظِرِينَ ⑳

२१. तथा तिनीहरू भन्छन्, उनीमाथि उनका प्रतिपालकका तर्फबाट किन कुनै चिह्न अवतीर्ण गरिएन?" तिमी भन, "अदृश्य (कुराहरू) का स्वामी ता अल्लाह रहेका छन् । त्यसकारण तिमीहरू प्रतीक्षा गर, प्रतीक्षाकारीहरूमध्ये म पनि तिमीहरूको साथमा रहेको छु ।"

وَإِذَآ أَذَقْنَا ٱلنَّاسَ رَحْمَةً مِّنۢ بَعْدِ ضَرَّآءَ مَسَّتْهُمْ إِذَا لَهُم مَّكْرٌ فِىٓ ءَايَاتِنَا ۚ قُلِ ٱللَّهُ أَسْرَعُ مَكْرًا ۚ إِنَّ رُسُلَنَا يَكْتُبُونَ مَا تَمْكُرُونَ ㉑

२२. त्यसघडी जब सङ्कटग्रस्त मानिसहरूलाई हामी करुणाको स्वाद चखाउँछौं, त्यसको तुरुन्तैपछि तिनीहरू हाम्रा चिह्नहरूविरुद्ध, योजना बनाउन थाल्छन् । तिमी भन, "योजना बनाउनमा अल्लाह अति तीव्र छन् ।" निश्चय नै, तिमीहरू जुन योजना बनाउँछौ, हाम्रा दूतहरूले त्यसको अभिलेख राख्छन् ।

هُوَ ٱلَّذِى يُسَيِّرُكُمْ فِى ٱلْبَرِّ وَٱلْبَحْرِ ۖ حَتَّىٰٓ إِذَا كُنتُمْ فِى ٱلْفُلْكِ وَجَرَيْنَ بِهِم بِرِيحٍ طَيِّبَةٍ وَفَرِحُوا۟ بِهَا جَآءَتْهَا رِيحٌ عَاصِفٌ وَجَآءَهُمُ ٱلْمَوْجُ مِن كُلِّ مَكَانٍ وَظَنُّوٓا۟ أَنَّهُمْ أُحِيطَ بِهِمْ ۙ

२३. ती उनी नै हुन्, जसले तिमीहरूलाई धर्तीमा र समुद्रमा भ्रमण गर्न तबसम्म योग्य बनाएका छन्, जबसम्म तिमीहरू जहाजहरूमाथि (सवार) हुन्छौ तथा तिनीहरू निर्मल बतासका साथ तिनीहरूलाई लिएर सन्चालित हुन्छन् र तिनीहरू त्यसमा आनन्दभूति गर्छन्,

(त्यतिकैमा) तिनीहरूलाई एउटा भयानक आँधीले आक्रमण गर्छ तथा तिनीहरूमाथि सबैतर्फबाट लहरहरू चढ्न थाल्छन् तथा तिनीहरूले आफूहरू घेरिएको अनुभव गर्छन् (तब) उनका निम्ति निष्कपट आस्थावान बन्ने सङ्कल्प गर्दै (के भनेर) पुकार्छन् (भने), "यदि तिमीले हामीलाई यसबाट रक्षा गऱ्यौ भने, हामी निश्चय नै कृतज्ञ व्यक्तिहरूमध्ये बन्नेछौं ।"

دَعَوُا اللّٰهَ مُخْلِصِيْنَ لَهُ الدِّيْنَ ۚ لَئِنْ اَنْجَيْتَنَا مِنْ هٰذِهٖ لَنَكُوْنَنَّ مِنَ الشّٰكِرِيْنَ ﴿٢٢﴾

२४. परन्तु जब उनले तिनीहरूको उद्धार गर्छन् (तब) लौ हेर तिनीहरू पृथ्वीमा अन्यायपूर्वक सीमोल्लङ्घन गर्न लाग्छन् । हे मानिसहरू हो, तिमीहरूको अतिवादिता केवल तिमीहरू स्वयम्‌विरुद्धै पर्ने छ– केवल सांसारिक जीवनको सुखभोग । त्यस पश्चात् हामीतर्फै तिमीहरूले फर्कनु पर्नेछ, तब तिमीहरूले के गर्ने गरेका थियौ भन्ने कुरा हामी तिमीहरूलाई अवगत गराउनेछौं ।

فَلَمَّآ اَنْجٰىهُمْ اِذَا هُمْ يَبْغُوْنَ فِى الْاَرْضِ بِغَيْرِ الْحَقِّ ؕ يٰۤاَيُّهَا النَّاسُ اِنَّمَا بَغْيُكُمْ عَلٰۤى اَنْفُسِكُمْ ۙ مَّتَاعَ الْحَيٰوةِ الدُّنْيَا ؗ ثُمَّ اِلَيْنَا مَرْجِعُكُمْ فَنُنَبِّئُكُمْ بِمَا كُنْتُمْ تَعْمَلُوْنَ ﴿٢٣﴾

२५. सांसारिक जीवनको उदाहरण त्यो पानी सदृश रहेको छ जसलाई हामी आकाशबाट उतार्छौं । तब त्यसमा पृथ्वीको वनस्पति मिसिन पुग्छ, जसलाई मानिसहरू र पशुहरू दुबैथरीले खाने गर्छन्, अतः जबसम्म पृथ्वी फकिएर प्रष्फुटित हुँदैन तथा उत्तमरूपमा पाक्दैन तबसम्म त्यो कम जारी नै रहन्छ । त्यसपछि त्यसका स्वामीहरूले त्यसमाथि आफ्नो पूर्ण अधिकार रहेको छ भन्ने ठान्छन्, त्यसप्रति रात्री अथवा दिनका समयमा अचानक हाम्रो आदेश आउँछ तब हामी त्यसलाई एउटा काटिएको खेतसरह तुल्याउँछौं मानौं त्यसमा हिजोसम्म कुनै वस्तुको अस्तित्त्व नै थिएन । यसै प्रकार हामी चिन्तन-मनन गर्ने व्यक्तिहरूका निम्ति चिह्नहरूको विस्तृत रूपमा वर्णन गर्ने गर्छौं ।

اِنَّمَا مَثَلُ الْحَيٰوةِ الدُّنْيَا كَمَآءٍ اَنْزَلْنٰهُ مِنَ السَّمَآءِ فَاخْتَلَطَ بِهٖ نَبَاتُ الْاَرْضِ مِمَّا يَاْكُلُ النَّاسُ وَالْاَنْعَامُ ؕ حَتّٰۤى اِذَاۤ اَخَذَتِ الْاَرْضُ زُخْرُفَهَا وَازَّيَّنَتْ وَظَنَّ اَهْلُهَاۤ اَنَّهُمْ قٰدِرُوْنَ عَلَيْهَاۤ ۙ اَتٰىهَاۤ اَمْرُنَا لَيْلًا اَوْ نَهَارًا فَجَعَلْنٰهَا حَصِيْدًا كَاَنْ لَّمْ تَغْنَ بِالْاَمْسِ ؕ كَذٰلِكَ نُفَصِّلُ الْاٰيٰتِ لِقَوْمٍ يَّتَفَكَّرُوْنَ ﴿٢٤﴾

२६. तथा अल्लाह शान्तिपूर्ण निवासतर्फ बोलाउछन् तथा जसलाई उनले चाहन्छन्, उसलाई सन्मार्ग प्रदर्शन गर्छन्

وَاللّٰهُ يَدْعُوْٓا اِلٰى دَارِ السَّلٰمِ ؕ وَيَهْدِيْ
مَنْ يَّشَآءُ اِلٰى صِرَاطٍ مُّسْتَقِيْمٍ ﴿٢٥﴾

२७. जसले पुण्यकार्य गर्छन्, तिनीहरूलाई सर्वोत्तम प्रतिदान तथा (अझ) अधिक (अनुग्रहहरू) प्राप्त हुनेछन् । तथा तिनीहरूका अनुहारमा न त अन्धकार छाउनेछ न कलङ्क नै । यिनीहरू नै स्वर्गका निवासी हुन्, त्यहाँ नै तिनीहरू (सदा) बसोवास गर्नेछन् ।

لِلَّذِيْنَ اَحْسَنُوا الْحُسْنٰى وَزِيَادَةٌ ؕ وَلَا
يَرْهَقُ وُجُوْهَهُمْ قَتَرٌ وَّلَا ذِلَّةٌ ؕ اُولٰٓئِكَ
اَصْحٰبُ الْجَنَّةِ ۚ هُمْ فِيْهَا خٰلِدُوْنَ ﴿٢٦﴾

२८. तथा जसले अपकर्म गर्छन्, तिनीहरूका (निम्ति) कुनै अपकर्मको दण्ड त्यही तुल्य हुनेछ, तथा तिनीहरूलाई कलङ्कले ढाक्नेछ । तिनीहरूलाई अल्लाहविरुद्ध बचाउने अन्य कोही हुनेछैन (तथा) (तिनीहरू यस्ता देखिनेछन्) मानौं तिनीहरूका अनुहारलाई अन्धकार रात्रिका टुक्राहरूले ढाकेको होस् । यिनीहरू नै अग्निका निवासी रहेका छन्, त्यहाँ तिनीहरू बसोवास गर्नेछन् ।

وَالَّذِيْنَ كَسَبُوا السَّيِّاٰتِ جَزَآءُ
سَيِّئَةٍۭ بِمِثْلِهَا ۙ وَتَرْهَقُهُمْ ذِلَّةٌ ؕ مَا
لَهُمْ مِّنَ اللّٰهِ مِنْ عَاصِمٍ ۚ كَاَنَّمَآ
اُغْشِيَتْ وُجُوْهُهُمْ قِطَعًا مِّنَ الَّيْلِ
مُظْلِمًا ؕ اُولٰٓئِكَ اَصْحٰبُ النَّارِ ۚ هُمْ
فِيْهَا خٰلِدُوْنَ ﴿٢٧﴾

२९. त्यस दिनप्रति डराऊ जब हामी तिनीहरू सबैलाई एकत्रित गर्नेछौं, त्यसपछि हामी (अल्लाहका) भागीदार (सहभागी) तुल्याउने व्यक्तिहरूलाई भन्नेछौं, "तिमीहरू र तिमीहरूका भागीदार देउताहरू आ-आफ्ना स्थानमै उभिराख ।" त्यसपछि हामी तिनीहरूलाई पृथक-पृथक गर्नेछौं, तथा जसलाई तिनीहरूले भागीदार ठानेका थिए तिनीहरूले भन्ने छन्, "हामी ती होइनौं जसको तिमीहरूले उपासना गर्थ्यौ ।

وَيَوْمَ نَحْشُرُهُمْ جَمِيْعًا ثُمَّ نَقُوْلُ
لِلَّذِيْنَ اَشْرَكُوْا مَكَانَكُمْ اَنْتُمْ وَ
شُرَكَآؤُكُمْ ۚ فَزَيَّلْنَا بَيْنَهُمْ وَ قَالَ
شُرَكَآؤُهُمْ مَّا كُنْتُمْ اِيَّانَا تَعْبُدُوْنَ ﴿٢٨﴾

३०. "अत: तिमीहरू र हामीबीच अल्लाह नै साक्षीस्वरूप पर्याप्त रहेका छन् । हामी निश्चय नै तिमीहरूको उपासनाबाट पूर्णरूपमा बेखबर थियौं ।"

فَكَفٰى بِاللّٰهِ شَهِيْدًاۢ بَيْنَنَا وَبَيْنَكُمْ اِنْ
كُنَّا عَنْ عِبَادَتِكُمْ لَغٰفِلِيْنَ ﴿٢٩﴾

३१. त्व हरेक आत्माले आफूले पहिला गर्ने गरेको कुरालाई राम्ररी

هُنَالِكَ تَبْلُوْا كُلُّ نَفْسٍ مَّآ اَسْلَفَتْ

وَرُدُّوٓا إِلَى ٱللَّهِ مَوْلَىٰهُمُ ٱلْحَقِّ وَضَلَّ عَنْهُم مَّا كَانُوا يَفْتَرُونَ ﴿٣٠﴾

जान्नेछ । तथा तिनीहरूलाई आफ्ना प्रकृत स्वामी, अल्लाहतर्फ फर्काएर लगिनेछ, तथा तिनीहरूले गढ्ने गरेका कुराहरू तिनीहरूबाट बिलोप हुनेछन् ।

قُلْ مَن يَرْزُقُكُم مِّنَ ٱلسَّمَآءِ وَٱلْأَرْضِ أَمَّن يَمْلِكُ ٱلسَّمْعَ وَٱلْأَبْصَٰرَ وَمَن يُخْرِجُ ٱلْحَىَّ مِنَ ٱلْمَيِّتِ وَيُخْرِجُ ٱلْمَيِّتَ مِنَ ٱلْحَىِّ وَمَن يُدَبِّرُ ٱلْأَمْرَ ۚ فَسَيَقُولُونَ ٱللَّهُ ۚ فَقُلْ أَفَلَا تَتَّقُونَ ﴿٣١﴾

३२. तिमी भन, "तिमीहरूका निम्ति आकाश र पृथ्वीबाट कसले जीविका प्रदान गर्छ? अथवा त्यो को हो जसको कान र आँखाहरूमाथि अधिकार रहेको छ? तथा कसले मृतबाट जीवित निकाल्छ र जीवितबाट मृत? तथा कसले सम्पूर्ण कार्यहरू सन्चालन गर्छ?" तिनीहरूले भन्नेछन्, "अल्लाह (ले) ।" तब तिमी भन, "त्यसो भए के तिमीहरू (आफ्ना व्यर्थ कियाकलापहरूबाट) पछि हट्दैनौ त?"

فَذَٰلِكُمُ ٱللَّهُ رَبُّكُمُ ٱلْحَقُّ ۖ فَمَاذَا بَعْدَ ٱلْحَقِّ إِلَّا ٱلضَّلَٰلُ ۖ فَأَنَّىٰ تُصْرَفُونَ ﴿٣٢﴾

३३. तिमीहरूका प्रकृत प्रतिपालक, अल्लाह यस्तै छन् । अतः सत्यपछि स्पष्ट पथभ्रष्टताबाहेक अन्य के शेष रहन्छ र? त्यसोभए तिमीहरू (सत्यबाट) कहाँ विमुख गराइएका छौ त?

كَذَٰلِكَ حَقَّتْ كَلِمَتُ رَبِّكَ عَلَى ٱلَّذِينَ فَسَقُوٓا أَنَّهُمْ لَا يُؤْمِنُونَ ﴿٣٣﴾

३४. यसै प्रकार विद्रोही व्यक्तिहरूविरुद्ध तिनीहरूले विश्वास स्थापना गर्दैनन् भन्ने तिम्रा प्रतिपालकको वचन सत्य प्रमाणित भएको छ ।

قُلْ هَلْ مِن شُرَكَآئِكُم مَّن يَبْدَؤُا ٱلْخَلْقَ ثُمَّ يُعِيدُهُۥ ۚ قُلِ ٱللَّهُ يَبْدَؤُا ٱلْخَلْقَ ثُمَّ يُعِيدُهُۥ ۖ فَأَنَّىٰ تُؤْفَكُونَ ﴿٣٤﴾

३५. तिमी भन, "के तिमीहरूका सहभागीहरूमध्ये कुनै एउटा यस्तो छ, जसले सृष्टिको शुभारम्भ गर्छ, त्यसपछि त्यसलाई दोहोऱ्याउँछ"? तिमी भन, "(केवल) अल्लाह नै हुन् जसले सृष्टिको शुभारम्भ गर्छन् तथा पुनः त्यसलाई दोहोऱ्याउँछन् । त्यसोभए तिमीहरूलाई कहाँ पथभ्रष्ट तुल्याइन्छ त?"

قُلْ هَلْ مِن شُرَكَآئِكُم مَّن يَهْدِىٓ إِلَى ٱلْحَقِّ ۚ قُلِ ٱللَّهُ يَهْدِى لِلْحَقِّ ۗ أَفَمَن يَهْدِىٓ إِلَى ٱلْحَقِّ أَحَقُّ أَن يُتَّبَعَ أَمَّن لَّا

३६. तिमी भन, "के तिमीहरूले भागीदार तुल्याएका उपास्यहरूमध्ये कुनै यस्तो छ जसले सत्यतर्फ मार्ग प्रदर्शन गर्छ? " तिमी भन, "अल्लाह नै हुन् जसले सत्यतर्फ मार्ग प्रदर्शन गर्छन् । अतः

يَهِدِّيْٓ اِلَّآ اَنْ يُّهْدٰى ۚ فَمَا لَكُمْ ۟ كَيْفَ تَحْكُمُوْنَ ﴿٣٥﴾

जसले सत्यतर्फ मार्ग प्रदर्शन गर्छ, त्यो नै अनुसरण गर्न योग्य रहेको छ, अथवा त्यो जसलाई मार्ग नदेखाउन्जेल (आफैले) मार्ग प्राप्त गर्न सक्दैन? त्यसो भए, तिमीहरूलाई के भयो त? तिमीहरू कस्तो निर्णय गर्छौ?"

وَمَا يَتَّبِعُ اَكْثَرُهُمْ اِلَّا ظَنًّا ۭ اِنَّ الظَّنَّ لَا يُغْنِيْ مِنَ الْحَقِّ شَيْـــًٔا ۭ اِنَّ اللّٰهَ عَلِيْمٌۢ بِمَا يَفْعَلُوْنَ ﴿٣٦﴾

३७. तथा तिनीहरूमध्ये धेरैजसोले त केवल अनुमानित कुराहरूबाहेक अरू केही अनुसरण गर्दैनन् । निश्चय नै, अनुमानित कुराहरूले सत्यको स्थान कुनै हालतमा लिन सक्दैनन् । निस्सन्देह तिनीहरूका कार्यहरूप्रति अल्लाह पूर्णरूपले अवगत रहेका छन् ।

وَمَا كَانَ هٰذَا الْقُرْاٰنُ اَنْ يُّفْتَرٰى مِنْ دُوْنِ اللّٰهِ وَلٰكِنْ تَصْدِيْقَ الَّذِيْ بَيْنَ يَدَيْهِ وَتَفْصِيْلَ الْكِتٰبِ لَا رَيْبَ فِيْهِ مِنْ رَّبِّ الْعٰلَمِيْنَ ﴿٣٧﴾

३८. तथा यो कुरान त्यस्तो होइन जुन अल्लाहबाहेक अन्य कोहीद्वारा गढिएको होस् । यस विपरित, यो त त्यो हो जसले यसअघि रहेकोलाई पूर्ण गर्छ तथा यो (अल्लाहको) विधानको विस्तृत वर्णन हो । यसबारे केही सन्देह हुन सक्दैन । (यो) विश्व ब्रह्माण्डका स्वामीका तर्फबाट हो ।

اَمْ يَقُوْلُوْنَ افْتَرٰىهُ ۭ قُلْ فَاْتُوْا بِسُوْرَةٍ مِّثْلِهٖ وَادْعُوْا مَنِ اسْتَطَعْتُمْ مِّنْ دُوْنِ اللّٰهِ اِنْ كُنْتُمْ صٰدِقِيْنَ ﴿٣٨﴾

३९. के तिनीहरू, "यसलाइं उनले गढेको हो" भन्छन्? तिमी भन, "यदि तिमीहरू साँचा हौ भने, अल्लाहबाहेक (आफ्नो) सहयोगका निम्ति तिमीहरूले सक्दो सबैलाई बोलाऊ र यो जस्तो कुनै एउटा सूरा: प्रस्तुत गर ।"

بَلْ كَذَّبُوْا بِمَا لَمْ يُحِيْطُوْا بِعِلْمِهٖ وَلَمَّا يَاْتِهِمْ تَاْوِيْلُهٗ ۭ كَذٰلِكَ كَذَّبَ الَّذِيْنَ مِنْ قَبْلِهِمْ فَانْظُرْ كَيْفَ كَانَ عَاقِبَةُ الظّٰلِمِيْنَ ﴿٣٩﴾

४०. होइन, (अपितु) तिनीहरूले यस्तो (वस्तु)लाई अस्वीकार गरेका छन्, जसबारे तिनीहरूले पूर्णज्ञान प्राप्त गरेका थिएनन् तथा त्यसको (वास्तविक) विशिष्टता अहिलेसम्म तिनीहरूसमक्ष खुल्न आएको छैन । यसै गरी तिनीहरूभन्दा अघिका व्यक्तिहरूले पनि (सत्यलाई) अस्वीकार गरेका थिए । परन्तु हेर, जसले अत्याचार गरेका थिए तिनीहरूको अन्त के रहेको थियो !

४१. तथा तिनीहरूमध्ये (केही) यस्ता (व्यक्तिहरू) छन् जसले त्यसप्रति विश्वास गर्छन्, तथा तिनीहरूमध्ये अन्य) केहीले भने त्यसप्रति विश्वास गर्दैनन्, तथा जसले विश्रृङ्खल सिर्जना गर्छन् तिनीहरूलाई तिम्रा प्रतिपालकले राम्ररी चिन्दछन् ।

وَمِنْهُمْ مَّنْ يُّؤْمِنُ بِهٖ وَمِنْهُمْ مَّنْ لَّا يُؤْمِنُ بِهٖ ۚ وَرَبُّكَ اَعْلَمُ بِالْمُفْسِدِيْنَ ۝٤٠

४२. तथा यदि तिनीहरूले तिमीलाई मिथ्यावादिताको आरोप लगाएमा, तिमी भन, "म मेरा कार्यहरूको जवाफदेह रहेको छु तथा तिमीहरू तिमीहरूकै । म जे कार्य गर्छु त्यसका निम्ति तिमीहरू जिम्मेवार छैनौ तथा तिमीहरू जे गर्छौ त्यसका निम्ति म जिम्मेवार छैन ।"

وَاِنْ كَذَّبُوْكَ فَقُلْ لِّيْ عَمَلِيْ وَلَكُمْ عَمَلُكُمْ ۚ اَنْتُمْ بَرِيْٓـُٔوْنَ مِمَّآ اَعْمَلُ وَاَنَا بَرِيْٓءٌ مِّمَّا تَعْمَلُوْنَ ۝٤١

४३. तथा तिनीहरूमध्ये (केही) यस्ता व्यक्तिहरू छन्, जसले तिमीतर्फ कान लगाउछन् । परन्तु के तिमीले कानालाई सुनाउन सक्छौ र यद्यपि तिनीहरू बुझ्दैनन् ?

وَمِنْهُمْ مَّنْ يَّسْتَمِعُوْنَ اِلَيْكَ ۗ اَفَاَنْتَ تُسْمِعُ الصُّمَّ وَلَوْ كَانُوْا لَا يَعْقِلُوْنَ ۝٤٢

४४. तथा तिनीहरूमध्ये (केही) यस्ता व्यक्तिहरू छन् जसले तिमीतर्फ हेर्छन् । परन्तु के तिमीले अन्धालाई मार्ग देखाउन सक्छौ र यद्यपि तिनीहरूले देख्दैनन् ?

وَمِنْهُمْ مَّنْ يَّنْظُرُ اِلَيْكَ ۗ اَفَاَنْتَ تَهْدِى الْعُمْيَ وَلَوْ كَانُوْا لَا يُبْصِرُوْنَ ۝٤٣

४५. निश्चय नै, अल्लाहले मानिसहरू माथि पटकै अत्याचार गर्दैनन्, परन्तु मानिसहरूले नै आफ्नो आत्मामाथि अत्याचार गर्छन् ।

اِنَّ اللّٰهَ لَا يَظْلِمُ النَّاسَ شَيْـًٔا وَّلٰكِنَّ النَّاسَ اَنْفُسَهُمْ يَظْلِمُوْنَ ۝٤٤

४६. तथा त्यसदिन जब उनले तिनीहरू सबैलाई एकत्रित गर्नेछन्, तब (तिनीहरूलाई कस्तो अनुभव हुनेछ भने) मानौं तिनीहरू दिनको एक घडीबाहेक संसारमा रहकै थिएनन् । तिनीहरूले एक अर्कालाई चिन्नेछन् । जसले अल्लाहसित हुने साक्षातकारबारे अस्वीकार गरे तथा जसलाई मार्गप्रदर्शन गरिएन, तिनीहरू नै निस्सन्देह घाटाग्रस्त व्यक्तिहरू रहेका छन्

وَيَوْمَ يَحْشُرُهُمْ كَاَنْ لَّمْ يَلْبَثُوْٓا اِلَّا سَاعَةً مِّنَ النَّهَارِ يَتَعَارَفُوْنَ بَيْنَهُمْ ۗ قَدْ خَسِرَ الَّذِيْنَ كَذَّبُوْا بِلِقَاۤءِ اللّٰهِ وَمَا كَانُوْا مُهْتَدِيْنَ ۝٤٥

४७. तथा यदि हामीले तिनीहरूलाई दिएको वचनको एकांशमाथि तिमीलाई साक्षी राखेमा अथवा -त्यसअघि नै) तिमीलाई मृत्यु प्रदान गरेमा, तिनीहरूको प्रत्यावर्तन त हामीतर्फै हुनेछ, तथा तिनीहरू जे कार्य गर्छन् अल्लाह त्यसका साक्षी रहेका छन् ।

وَإِمَّا نُرِيَنَّكَ بَعْضَ الَّذِي نَعِدُهُمْ أَوْ نَتَوَفَّيَنَّكَ فَإِلَيْنَا مَرْجِعُهُمْ ثُمَّ اللَّهُ شَهِيدٌ عَلَىٰ مَا يَفْعَلُونَ ﴿٤٧﴾

४८. तथा हरेक जातिका निम्ति एकजना सन्देशवाहक रहेका छन् । अतः जब. तिनीहरूका सन्देशवाहकको आगमन हुन्छ, तिनीहरूका बीचमा न्यायका साथ निर्णय गरिन्छ, तथा तिनीहरूमाथि अन्याय गरिँदैन ।

وَلِكُلِّ أُمَّةٍ رَّسُولٌ فَإِذَا جَاءَ رَسُولُهُمْ قُضِيَ بَيْنَهُم بِالْقِسْطِ وَهُمْ لَا يُظْلَمُونَ ﴿٤٨﴾

४९. तथा तिनीहरू भन्छन्, "यदि तिमीहरू साँचा हौ भने त्यो वचन कहिले (पूर्ण हुन्छ)?

وَيَقُولُونَ مَتَىٰ هَٰذَا الْوَعْدُ إِن كُنتُمْ صَادِقِينَ ﴿٤٩﴾

५०. तिमी भन, "अल्लाहको जे इच्छा रहेको छ त्यसबाहेक, ममा न आफ्नो हानि गर्ने शक्ति रहेको छ न त कुनै लाभ उठाउने नै । हरेक (अविश्वासी) जातिका निम्ति एउटा निर्धारित म्याद रहेको छ । जब तिनीहरको म्याद पूर्ण हुन्छ, (तब) तिनीहरू त्यसबाट न त एक विपल पछि रहन सक्छन् न (त्यो भन्दा) अघि बढ्न नै सक्छन् ।"

قُل لَّا أَمْلِكُ لِنَفْسِي ضَرًّا وَلَا نَفْعًا إِلَّا مَا شَاءَ اللَّهُ لِكُلِّ أُمَّةٍ أَجَلٌ إِذَا جَاءَ أَجَلُهُمْ فَلَا يَسْتَأْخِرُونَ سَاعَةً وَلَا يَسْتَقْدِمُونَ ﴿٥٠﴾

५१. तिमी भन, "तिमीहरू मलाई भन त, यदि तिमीहरूमाथि रात्रि वा दिनमा उनको दण्ड आइलागेमा, अपराधी व्यक्ति त्यसबाट हतारिएर कसरी बच्न सक्छ र?

قُلْ أَرَأَيْتُمْ إِنْ أَتَاكُمْ عَذَابُهُ بَيَاتًا أَوْ نَهَارًا مَّاذَا يَسْتَعْجِلُ مِنْهُ الْمُجْرِمُونَ ﴿٥١﴾

५२. "के जब त्यो तिमीहरूमाथि आइलाग्छ तब तिमीहरू त्यसप्रति विश्वास गर्छौ त? के! अब ! तथा (यस अघि त) तिमीहरू त्यसको शीघ्र आगमनको माग गर्ने गर्थ्यौ?"

أَثُمَّ إِذَا مَا وَقَعَ آمَنتُم بِهِ آلْآنَ وَقَدْ كُنتُم بِهِ تَسْتَعْجِلُونَ ﴿٥٢﴾

५३. तब तिनीहरूलाई, जसले अत्याचार

ثُمَّ قِيلَ لِلَّذِينَ ظَلَمُوا ذُوقُوا

गर्थे, भनिनेछ, "तिमीहरू लामो समयसम्म रहने सजाय चाख । तिमीहरूलाई प्रतिदान दिइनेछैन परन्तु त्यसैको जुन (कुरा) तिमीहरूले कमाउने गर्थ्यौ ।"

عَذَابَ الْخُلْدِ ۚ هَلْ تُجْزَوْنَ إِلَّا بِمَا كُنْتُمْ تَكْسِبُونَ ﴿٥٣﴾

५४. तथा तिनीहरू तिमीसित सोध्छन्, "के त्यो सत्य हो त?" तिमी भन, "हो मेरा प्रतिपालकको शपथ, यो निःस्सन्देह सत्य हो, तथा तिमीहरूले उनलाई पराहत गर्न सक्नेछैनौ ।"

وَيَسْتَنْبِئُونَكَ أَحَقٌّ هُوَ ۖ قُلْ إِي وَرَبِّي إِنَّهُ لَحَقٌّ ۖ وَمَا أَنْتُمْ بِمُعْجِزِينَ ﴿٥٤﴾

५५. तथा यदि प्रत्येक अत्याचारी आत्मालाई पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरू प्राप्त भएमा, त्यसले ती सबै वस्तुहरू (स्वयम्का निम्ति) क्षतिपूर्ति स्वरूप दिने थियो । तथा जब तिनीहरूले दण्डलाई देख्नेछन् (तब) तिनीहरूले (आफ्नो) लज्जालाई लुकाउने छन् । तथा तिनीहरूका बीचमा न्यायकासाथ निर्णय हुनेछ, र तिनीहरूमाथि अन्याय गरिने छैन।

وَلَوْ أَنَّ لِكُلِّ نَفْسٍ ظَلَمَتْ مَا فِي الْأَرْضِ لَافْتَدَتْ بِهِ ۗ وَأَسَرُّوا النَّدَامَةَ لَمَّا رَأَوُا الْعَذَابَ ۖ وَقُضِيَ بَيْنَهُمْ بِالْقِسْطِ ۚ وَهُمْ لَا يُظْلَمُونَ ﴿٥٥﴾

५६. हेर ! आकाशमण्डल र पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरू निस्सन्देह अल्लाहकै हुन् । हेर ! अल्लाहको वचन नित्यान्त सत्य रहेको छ ! परन्तु तिनीहरूमध्ये अधिकतर व्यक्तिहरू जान्दैनन् ।

أَلَا إِنَّ لِلَّهِ مَا فِي السَّمَاوَاتِ وَالْأَرْضِ ۗ أَلَا إِنَّ وَعْدَ اللَّهِ حَقٌّ وَلَٰكِنَّ أَكْثَرَهُمْ لَا يَعْلَمُونَ ﴿٥٦﴾

५७. ती उनी नै हुन् जसले जीवनदान गर्छन् तथा मृत्यु प्रदान गर्छन्, तथा उनीतर्फ नै तिमीहरूलाई फर्काएर लगिनेछ ।

هُوَ يُحْيِي وَيُمِيتُ وَإِلَيْهِ تُرْجَعُونَ ﴿٥٧﴾

५८. हे मानव जाति ! तिमीहरूसमक्ष तिमीहरूका प्रतिपालकका तर्फबाट निस्सन्देह एउटा उपदेश आएको छ तथा हृदयमा रहेका हरेक (रोग)को एउटा उपचार, तथा विश्वासीजनका निम्ति मार्गदर्शन र अनुग्रह पनि रहेको छ ।

يَا أَيُّهَا النَّاسُ قَدْ جَاءَتْكُمْ مَوْعِظَةٌ مِنْ رَبِّكُمْ وَشِفَاءٌ لِمَا فِي الصُّدُورِ ۙ وَهُدًى وَرَحْمَةٌ لِلْمُؤْمِنِينَ ﴿٥٨﴾

५९. तिमी भन, "(यो सबै) अल्लाहको

قُلْ بِفَضْلِ اللَّهِ وَبِرَحْمَتِهِ فَبِذَٰلِكَ

فَلْيَفْرَحُوْا ۭهُوَ خَيْرٌ مِّمَّا يَجْمَعُوْنَ ﴿٥٩﴾

कृपा र उनको करुणाद्वारा नै (भएको) हो, त्यसकारण, त्यसैमा तिनीहरू प्रसन्न रहुन् । किनभने जे तिनीहरूले थुपारेको छ त्योभन्दा त त्यही नै उत्तम रहेको छ ।

قُلْ اَرَءَيْتُمْ مَّآ اَنْزَلَ اللّٰهُ لَكُمْ مِّنْ رِّزْقٍ فَجَعَلْتُمْ مِّنْهُ حَرَامًا وَّحَلٰلًا ۭ قُلْ اٰۗللّٰهُ اَذِنَ لَكُمْ اَمْ عَلَى اللّٰهِ تَفْتَرُوْنَ ﴿٦٠﴾

६०. तिमी भन, "के तिमीहरूले अल्लाहले तिमीहरूका निम्ति जीविका अवतीर्ण गरेकोबारे ध्यान दिएका छौ, जसमध्ये (केहीलाई) तिमीहरूले अवैध ठह-याएका छौ भने अन्य (केही वस्तुहरूलाई) चाहिँ वैध ठह-याएका छौ?" तिमी भन, "के अल्लाहले तिमीहरूलाई त्यसको अनुमति दिएका छन् अथवा अल्लाहविरुद्ध तिमीहरू मिथ्या गढिरहेछौ?"

وَمَا ظَنُّ الَّذِيْنَ يَفْتَرُوْنَ عَلَى اللّٰهِ الْكَذِبَ يَوْمَ الْقِيٰمَةِ ۭ اِنَّ اللّٰهَ لَذُوْ فَضْلٍ عَلَي النَّاسِ وَلٰكِنَّ اَكْثَرَهُمْ لَا يَشْكُرُوْنَ ﴿٦١﴾

६१. जुन व्यक्तिहरूले अल्लाहविरुद्ध मिथ्या गढ्छन् पुनरुत्थानको दिनबारे तिनीहरूको के धारणा रहेको छ? निस्सन्देह, मानवजातिप्रति अल्लाह परम कृपालु रहेका छन्, परन्तु तिनीहरूमध्ये अधिकतर व्यक्ति कृतज्ञ छैनन् ।

وَمَا تَكُوْنُ فِيْ شَاْنٍ وَّمَا تَتْلُوْا مِنْهُ مِنْ قُرْاٰنٍ وَّلَا تَعْمَلُوْنَ مِنْ عَمَلٍ اِلَّا كُنَّا عَلَيْكُمْ شُهُوْدًا اِذْ تُفِيْضُوْنَ فِيْهِ ۭ وَمَا يَعْزُبُ عَنْ رَّبِّكَ مِنْ مِّثْقَالِ ذَرَّةٍ فِي الْاَرْضِ وَلَا فِي السَّمَاۗءِ وَلَآ اَصْغَرَ مِنْ ذٰلِكَ وَلَآ اَكْبَرَ اِلَّا فِيْ كِتٰبٍ مُّبِيْنٍ ﴿٦٢﴾

६२. तथा तिमीहरू कुनै कार्यमा व्यस्त रहँदैनौ, तथा उनीबाट तिमीहरू कुरानको कुनै अंश पाठ गर्दैनौ, तथा तिमीहरूले कुनै कार्य गर्दैनौ परन्तु तिमीहरू जब त्यसमा तल्लीन रहन्छौ हामी तिमीहरूमाथि दृष्टि राख्छौं । तिम्रा प्रतिपालकका दृष्टिबाट पृथ्वीमा वा आकाशमण्डलमा रहेको कुनै वस्तु अदृश्य रहेको छैन चाहे त्यो सूक्ष्मकण भन्दा ठूलो होस् अथवा त्यो भन्दा सानु नै किन नहोस् परन्तु त्यो (कुरा) स्पष्ट पुस्तकमा (लिपिबद्ध) रहेको छ ।

اَلَآ اِنَّ اَوْلِيَاۗءَ اللّٰهِ لَا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُوْنَ ﴿٦٣﴾

६३. हेर ! निस्सन्देह अल्लाहका मित्रहरूलाई न डर हुनेछ न त तिनीहरू शोकग्रस्त हुनेछन्–

الَّذِيْنَ اٰمَنُوْا وَكَانُوْا يَتَّقُوْنَ ﴿٦٤﴾

६४. ती व्यक्तिहरू जसले विश्वास गरे तथा सदा धर्मपरायणतापूर्ण कार्य गरे –

لَهُمُ الْبُشْرٰى فِى الْحَيٰوةِ الدُّنْيَا وَ فِى الْاٰخِرَةِ ۚ لَا تَبْدِيْلَ لِكَلِمٰتِ اللّٰهِ ۚ ذٰلِكَ هُوَ الْفَوْزُ الْعَظِيْمُ ﴿٦٤﴾

६४. तिनीहरूका निम्ति यस लोकमा तथा परलोकमा (समेत) शुभ सन्देशहरू रहेका छन्– अल्लाहका शब्दहरूमा कुनै परिवर्तन आउनेछैन, निस्सन्देह यही नै सर्वोत्कृष्ट विजय रहेको छ ।

وَلَا يَحْزُنْكَ قَوْلُهُمْ ۘ اِنَّ الْعِزَّةَ لِلّٰهِ جَمِيْعًا ۚ هُوَ السَّمِيْعُ الْعَلِيْمُ ﴿٦٥﴾

६५. तिनीहरूका वचनहरूले तिमीलाई दुखित नतुल्याउन् । निश्चय नै सम्पूर्ण सम्मान अल्लाह कै निम्ति रहेको छ । उनी सर्वश्रोता, सर्वज्ञ रहेका छन् ।

اَلَآ اِنَّ لِلّٰهِ مَنْ فِى السَّمٰوٰتِ وَ مَنْ فِى الْاَرْضِ ۚ وَمَا يَتَّبِعُ الَّذِيْنَ يَدْعُوْنَ مِنْ دُوْنِ اللّٰهِ شُرَكَآءَ ۚ اِنْ يَّتَّبِعُوْنَ اِلَّا الظَّنَّ وَاِنْ هُمْ اِلَّا يَخْرُصُوْنَ ﴿٦٦﴾

६६. हेर ! आकाशमण्डलमा जे छ तथा पृथ्वीमा जे छ सबै अल्लाहकै रहेको छ । ती व्यक्तिहरू जसले अल्लाहलाई छाडी अन्य भागीदारहरूलाई पुकार्ने गर्छन् तिनीहरू (वास्तवमा) तिनीहरूको अनुसरण गर्दैनन् । तिनीहरू अनुसरण गर्दैनन् परन्तु कल्पनाको (मात्र)। तथा तिनीहरू व्यस्त रहँदैनन् परन्तु अनुमानहरूमा ।

هُوَ الَّذِيْ جَعَلَ لَكُمُ الَّيْلَ لِتَسْكُنُوْا فِيْهِ وَ النَّهَارَ مُبْصِرًا ۚ اِنَّ فِيْ ذٰلِكَ لَاٰيٰتٍ لِّقَوْمٍ يَّسْمَعُوْنَ ﴿٦٧﴾

६७. ती उनी नै हुन् जसले रात्रीलाई तिमीहरूका निम्ति बनाए ताकि तिमीहरू त्यसमा विश्राम गर, तथा दिनलाई (उनले) प्रकाशमय बनाए । निश्चय नै, सुन्ने व्यक्तिहरूका निम्ति यसमा चिह्नहरू रहेका छन् ।

قَالُوا اتَّخَذَ اللّٰهُ وَلَدًا سُبْحٰنَهٗ ۚ هُوَ الْغَنِيُّ ۚ لَهٗ مَا فِى السَّمٰوٰتِ وَ مَا فِى الْاَرْضِ ۚ اِنْ عِنْدَكُمْ مِّنْ سُلْطٰنٍ بِهٰذَا ۚ اَتَقُوْلُوْنَ عَلَى اللّٰهِ مَا لَا تَعْلَمُوْنَ ﴿٦٨﴾

६८. तिनीहरू भन्छन्, "अल्लाहले स्वयम्का निम्ति एउटा पुत्र ग्रहण गरेका छन् ।" उनी त पवित्र छन् । उनी आत्मनिर्भर छन् । आकाशमण्डलमा जे छ तथा पृथ्वीमा जे छ उनकै रहेको छ । त्यसको तिमीहरूसित केही प्रमाण छैन । के तिमीहरू अल्लाहविरुद्ध त्यो कुरा गर्छौ जसबारे तिमीहरूलाई ज्ञान छैन?

قُلْ اِنَّ الَّذِيْنَ يَفْتَرُوْنَ عَلَى اللّٰهِ الْكَذِبَ لَا يُفْلِحُوْنَ ﴿٦٩﴾

६९. तिमी भन, "जुन व्यक्तिहरूले अल्लाहविरुद्ध मिथ्या गढ्ने गर्छन् कदापि कृतार्थ हुनेछैनन् ।

مَتَاعٌ فِي الدُّنْيَا ثُمَّ إِلَيْنَا مَرْجِعُهُمْ ثُمَّ نُذِيقُهُمُ الْعَذَابَ الشَّدِيدَ بِمَا كَانُوا يَكْفُرُونَ ﴿٧١﴾

७१. (तिनीहरूले) यस पृथ्वीमा एउटा सानो क्षणिक लाभ उठाउनेछन् । त्यसपछि हामीतर्फै तिनीहरूको प्रत्यावर्तन हुनेछ । त्यसपश्चात् तिनीहरूलाई हामी कठोर दण्ड चखाउने छौं, किनभने तिनीहरू विश्वास गर्दैनथे ।

وَاتْلُ عَلَيْهِمْ نَبَأَ نُوحٍ إِذْ قَالَ لِقَوْمِهِ يَا قَوْمِ إِنْ كَانَ كَبُرَ عَلَيْكُمْ مَقَامِي وَتَذْكِيرِي بِآيَاتِ اللَّهِ فَعَلَى اللَّهِ تَوَكَّلْتُ فَأَجْمِعُوا أَمْرَكُمْ وَشُرَكَاءَكُمْ ثُمَّ لَا يَكُنْ أَمْرُكُمْ عَلَيْكُمْ غُمَّةً ثُمَّ اقْضُوا إِلَيَّ وَلَا تُنْظِرُونِ ﴿٧٢﴾

७२. तथा तिनीहरूसमक्ष नूहको वृत्तान्त सुनाउ, जब उनले आफ्ना मानिसहरूलाई भनेका थिए, "हे मेरा मानिसहरू हो, यदि (अल्लाहका जुनाफमा) मेरो पद र अल्लाहका चिह्नहरूद्वारा तिमीहरूको कर्तव्य तिमीहरूलाई स्मरण गराउने मेरो कार्य तिमीहरूलाई नराम्रो लाग्छ भने– अत: म त अल्लाहप्रति नै आफ्नो भरोसा राख्छु – अत: तिमीहरू र तिमीहरूका 'भागीदारहरू' (मिलेर) आफ्ना (सम्पूर्ण) योजनाहरू एकत्रित गर, तब तिमीहरूको कार्यपद्धतिका सम्बन्धमा तिमीहरूलाई कुनै सन्देह नरहोस्, त्यसपछि आफ्ना योजनाहरू मेराविरुद्ध लागू गर तथा मलाई कुनै प्रकारको अवसर नदेऊ ।

فَإِنْ تَوَلَّيْتُمْ فَمَا سَأَلْتُكُمْ مِنْ أَجْرٍ إِنْ أَجْرِيَ إِلَّا عَلَى اللَّهِ وَأُمِرْتُ أَنْ أَكُونَ مِنَ الْمُسْلِمِينَ ﴿٧٣﴾

७३. "परन्तु यदि तिमीहरू विमुख भयौ भने, (स्मरण राख), मैले तिमीहरूसित कुनै प्रतिदान मागेको छैन । मेरो प्रतिदान त केवल अल्लाहका जुनापफा रहेको छ, तथा मलाई आज्ञाकारी बनिसकेका व्यक्तिहरूमध्ये (को) बन्ने आदेश भएको छ ।"

فَكَذَّبُوهُ فَنَجَّيْنَاهُ وَمَنْ مَعَهُ فِي الْفُلْكِ وَجَعَلْنَاهُمْ خَلَائِفَ وَأَغْرَقْنَا الَّذِينَ كَذَّبُوا بِآيَاتِنَا فَانْظُرْ كَيْفَ كَانَ عَاقِبَةُ الْمُنْذَرِينَ ﴿٧٤﴾

७४. परन्तु तिनीहरूले उनलाई अस्वीकार गरे, अत: हामीले उनलाई र उनीसित डुङ्गामा रहेका व्यक्तिहरूलाई बचायौं । तथा हामीले तिनीहरूलाई (पृथ्वीका) उत्तराधिकारी बनायौं, तथा जसले हाम्रा चिह्नहरूलाई अस्वीकार गरेका थिए तिनीहरूलाई हामीले डुबायौं । अत: हेर, जुन व्यक्तिहरूलाई सचेत गरिएको थियो तिनीहरूको अन्त कस्तो भयो ।

७५. त्यसपश्चात् हामीले उनीपछि (अन्य) सन्देशवाहकहरूलाई उनीहरूका (आ-आफ्ना) जातितर्फ पठायौं । तथा तिनीहरूले उनीहरू समक्ष स्पष्ट प्रमाणहरू प्रस्तुत गरे । परन्तु उनीहरूले तिनीहरूप्रति विश्वास गरेनन् । किनभने तिनीहरूलाई उनीहरूले अघि नै अस्वीकार गरिसकेका थिए । यसै प्रकार हामी सीमोल्लङ्घनकारीहरूका हृदयलाई मोहरबन्द गर्ने गर्छौं ।

ثُمَّ بَعَثْنَا مِنْ بَعْدِهٖ رُسُلًا اِلٰى قَوْمِهِمْ فَجَآءُوْهُمْ بِالْبَيِّنٰتِ فَمَا كَانُوْا لِيُؤْمِنُوْا بِمَا كَذَّبُوْا بِهٖ مِنْ قَبْلُ ؕ كَذٰلِكَ نَطْبَعُ عَلٰى قُلُوْبِ الْمُعْتَدِيْنَ ﴿٧٥﴾

७६. पुनः तिनीहरू पश्चात् हामीले मूसा र हारुनलाई हाम्रा चिह्नहरूकासाथ फिरौन तथा उसका मुखियाहरूतर्फ पठायौं, परन्तु तिनीहरूले अहंकारपूर्ण व्यवहार गरे । तथा तिनीहरू एउटा पापी जाति थिए ।

ثُمَّ بَعَثْنَا مِنْ بَعْدِهِمْ مُّوْسٰى وَهٰرُوْنَ اِلٰى فِرْعَوْنَ وَمَلَا۟ئِهٖ بِاٰيٰتِنَا فَاسْتَكْبَرُوْا وَكَانُوْا قَوْمًا مُّجْرِمِيْنَ ﴿٧٦﴾

७७. तथा जब तिनीहरूसमक्ष हाम्रा तर्फबाट सत्य प्रकट भयो, तिनीहरूले भने, "निश्चय नै यो एउटा स्पष्ट जादु हो ।"

فَلَمَّا جَآءَهُمُ الْحَقُّ مِنْ عِنْدِنَا قَالُوْٓا اِنَّ هٰذَا لَسِحْرٌ مُّبِيْنٌ ﴿٧٧﴾

७८. मूसाले भने, "के तिमीहरू सत्यका सम्बन्धमा तिमीहरूसमक्ष त्यसको आगमनपश्चात् पनि (त्यसो) भन्छौ? के यो टुना हो त? तथा जादुगरहरू कदापि विजयी हुन सक्दैनन् ।

قَالَ مُوْسٰٓى اَتَقُوْلُوْنَ لِلْحَقِّ لَمَّا جَآءَكُمْ ؕ اَسِحْرٌ هٰذَا ؕ وَلَا يُفْلِحُ السّٰحِرُوْنَ ﴿٧٨﴾

७९. तिनीहरूले भने, "हामीले हाम्रा पितृहरूलाई जुन कुराका अनुयायी पाएका छौं त्यस कुराबाट हामीलाई विमुख तुल्याउन तथा तिमीहरू दुबैलाई देशमा महानता प्राप्त होस् भनी तिमी हामीसमक्ष आएका हौ त? परन्तु हामी तिमीहरू दुबैमध्ये कसैमाथि (पनि) विश्वास गर्नेछैनौं ।

قَالُوْٓا اَجِئْتَنَا لِتَلْفِتَنَا عَمَّا وَجَدْنَا عَلَيْهِ اٰبَآءَنَا وَتَكُوْنَ لَكُمَا الْكِبْرِيَآءُ فِى الْاَرْضِ ؕ وَمَا نَحْنُ لَكُمَا بِمُؤْمِنِيْنَ ﴿٧٩﴾

८०. तथा फिरौनले भन्यो, "हरेक निपुण जादुगरलाई मेरासमक्ष उपस्थित गर ।"

وَقَالَ فِرْعَوْنُ ائْتُوْنِيْ بِكُلِّ سٰحِرٍ عَلِيْمٍ ﴿٨٠﴾

فَلَمَّا جَاءَ السَّحَرَةُ قَالَ لَهُم مُّوسَىٰ أَلْقُوا مَا أَنتُم مُّلْقُونَ ﴿٨١﴾

८१. तथा जब जादुगरहरू आए, मूसाले तिनीहरूलाई भने, "जुन कुरा तिमीहरूले प्रस्तुत गर्नु छ त्यो प्रस्तुत गर ।"

فَلَمَّا أَلْقَوْا قَالَ مُوسَىٰ مَا جِئْتُم بِهِ السِّحْرُ ۖ إِنَّ اللَّهَ سَيُبْطِلُهُ ۖ إِنَّ اللَّهَ لَا يُصْلِحُ عَمَلَ الْمُفْسِدِينَ ﴿٨٢﴾

८२. तथा जब तिनीहरूले प्रस्तुत गरे, मूसाले भने, "जुन कुरा तिमीहरूले ल्याएका छौ त्योत (केवल) एउटा जादुगरी हो । निश्चय नै, अल्लाहले त्यसलाई व्यर्थ तुल्याउनेछन् । निस्सन्देह, अल्लाहले उपद्रवी व्यक्तिहरूको कार्यलाई सफल हुन दिँदैनन् ।

وَيُحِقُّ اللَّهُ الْحَقَّ بِكَلِمَاتِهِ وَلَوْ كَرِهَ الْمُجْرِمُونَ ﴿٨٣﴾

८३. "तथा अल्लाहले आफ्ना वाणीहरूद्वारा सत्यको स्थापना गर्छन्, यद्यपि पापी व्यक्तिहरूले (त्यसलाई) मन नपराउन सक्छन् ।

فَمَا آمَنَ لِمُوسَىٰ إِلَّا ذُرِّيَّةٌ مِّن قَوْمِهِ عَلَىٰ خَوْفٍ مِّن فِرْعَوْنَ وَمَلَئِهِمْ أَن يَفْتِنَهُمْ ۚ وَإِنَّ فِرْعَوْنَ لَعَالٍ فِي الْأَرْضِ ۖ وَإِنَّهُ لَمِنَ الْمُسْرِفِينَ ﴿٨٤﴾

८४. तथा उसका मानिसहरूमध्ये एउटा पिढीलेबाहेक अन्य कसैले फिरौन र उनीहरूका मुखियाहरूको डरले कदाचित उसले तिनीहरूलाई उत्पीडित तुल्याउला भन्ने डरले मूसाको आज्ञापालन गरेनन् । तथा सत्य के हो भने फिरौन देशको क्रूर शासक र निस्सन्देह सीमोल्लङ्घनकारी व्यक्तिहरूमध्ये
(एक) थियो ।

وَقَالَ مُوسَىٰ يَا قَوْمِ إِن كُنتُمْ آمَنتُم بِاللَّهِ فَعَلَيْهِ تَوَكَّلُوا إِن كُنتُم مُّسْلِمِينَ ﴿٨٥﴾

८५. तथा मूसाले भने, "हे मेरा मानिसहरू हो ! यदि तिमीहरूले अल्लाहप्रति विश्वास स्थापना गरेका छौ भने र वस्तुतः यदि तिमीहरू (उनकै इच्छाप्रति) समर्पित रहेका छौ भने, उनीमाथि नै आफ्नो भरोसा राख ।"

فَقَالُوا عَلَى اللَّهِ تَوَكَّلْنَا رَبَّنَا لَا تَجْعَلْنَا فِتْنَةً لِّلْقَوْمِ الظَّالِمِينَ ﴿٨٦﴾

८६. तथा तिनीहरूले भने, "अल्लाहमाथि नै हामी भरोसा राख्छौं । हे हाम्रा प्रतिपालक, अत्याचारी व्यक्तिहरूका निम्ति हामीलाई परीक्षाको साधनस्वरूप नबनाउ ।

وَنَجِّنَا بِرَحْمَتِكَ مِنَ الْقَوْمِ الْكٰفِرِيْنَ ﴿٨٦﴾

८७. तथा हामीलाई आफ्नो कृपाद्वारा अविश्वासी जातिबाट मुक्त गर ।"

وَاَوْحَيْنَآ اِلٰى مُوْسٰى وَاَخِيْهِ اَنْ تَبَوَّاٰ لِقَوْمِكُمَا بِمِصْرَ بُيُوْتًا وَّاجْعَلُوْا بُيُوْتَكُمْ قِبْلَةً وَّاَقِيْمُوا الصَّلٰوةَ ؕ وَبَشِّرِ الْمُؤْمِنِيْنَ ﴿٨٧﴾

८८. तथा हामीले मूसा र उनका भाइसित यसो भन्दै वार्ता गर्‍यौं, "तिमीहरू आफ्ना मानिसहरूका निम्ति नगरमा घरहरू निर्माण गर तथा आफ्ना घरहरू एकै दिशातर्फ फर्किएका* बनाऊ तथा नमाज अनुष्ठान गर । तथा विश्वासीजनलाई शुभसन्देश देऊ ।"

وَقَالَ مُوْسٰى رَبَّنَآ اِنَّكَ اٰتَيْتَ فِرْعَوْنَ وَمَلَاَهٗ زِيْنَةً وَّاَمْوَالًا فِى الْحَيٰوةِ الدُّنْيَا ۙ رَبَّنَا لِيُضِلُّوْا عَنْ سَبِيْلِكَ ۚ رَبَّنَا اطْمِسْ عَلٰٓى اَمْوَالِهِمْ وَاشْدُدْ عَلٰى قُلُوْبِهِمْ فَلَا يُؤْمِنُوْا حَتّٰى يَرَوُا الْعَذَابَ الْاَلِيْمَ ﴿٨٨﴾

८९. तथा मूसाले भने, "हे हाम्रा प्रतिपालक, तिमीले फिरौन र उसका मुखियाहरूलाई यस जीवनमा सौन्दर्य(का साधन)हरू र धन प्रदान गरेका छौ । हे हाम्रा प्रतिपालक, त्यसको परिणाम तिनीहरूले (मानिसहरूलाई) तिम्रा मार्गबाट विभ्रान्त तुल्याउनुबाहेक केही हुनेछैन । हे हाम्रा प्रतिपालक ! तिनीहरूको धन नष्ट गर तथा तिनीहरूका हृदयप्रति कठोरता अवलम्बन गर, किनभने तिनीहरूले जबसम्म पीडादायक दण्ड देख्नेछैनन् (तबसम्म)

---

* उक्त आयतमा अरबी शब्दहरू 'वाज्अलू बुयूतकुम किब्लातान्' (وَاجْعَلُوْا بُيُوْتَكُمْ قِبْلَةً) को अर्थ: किब्लातर्फ फर्किएको हो; यसै गरी प्रार्थनाका निम्ति निर्धारित केन्द्रविन्दु (दिशा) वा स्थान अथवा परस्पर एक अर्कातर्फ फर्किएको अथवा एकै दिशातर्फ फर्किएको । पहिलो अर्थ भने ग्रहणयोग्य नै छैन किनभने सुलेमानको मन्दिर स्थापना हुनुअघि इजरायलका सन्तानका निम्ति कुनै निश्चित किब्ला तोकिएकै थिएन ।

दोस्रो अर्थलाई चुन्ने हो भने सुरक्षाको उद्देश्यले घरहरू परस्पर एक अर्कातर्फ फर्किएका बनाइएको हो भन्ने कुरा स्पष्ट हुन जान्छ ।

हामीले तेस्रो अर्थलाई प्राथमिकता दिएका छौं । अर्थात् तिमीहरू आफ्ना घरहरू एकै दिशातर्फ फर्किएका निर्माण गर । यसमा सबै घरहरूका निवासीहरूलाई एकै दिशातर्फ फर्किएर उपासना गर्ने सुविधा रहेको छ जसबाट तिनीहरूमा एउटा एकता र अनुशासनको चेतना जागृत हुन्छ ।

उक्त आदेशको लगत्तै पछि विश्वासीजनलाई नमाज अनुष्ठान गर्ने परामर्श दिइएको छ जसले हाम्रो विचारधाराको अझ पुष्टि गर्छ । यसको कारण के हो भने अरबी शब्द "अकिमुस्सलाता' (اَقِيْمُوا الصَّلٰوةَ) ले केवल व्यक्तिगत रूपमा नमाज अनुष्ठान गर्ने आदेश दिदैन अपितु जमातको रूपमा नमाज अनुष्ठानप्रति जोड दिन्छ ।

विश्वास स्थापना गर्नेछैनन् (भन्ने कुरा देखिन्छ)।"

९०. उनले भने, "तिमीहरूको प्रार्थना स्वीकार गरियो । त्यसकारण तिमीहरू दुबैजना धैर्यधारी बन, तथा अज्ञानी व्यक्तिहरूको मार्ग अनुसरण नगर ।"

قَالَ قَدْ أُجِيبَتْ دَّعْوَتُكُمَا
فَاسْتَقِيمَا وَلَا تَتَّبِعَآنِّ سَبِيلَ
الَّذِينَ لَا يَعْلَمُونَ ﴿٩٠﴾

९१. तथा इजरायलका सन्तानलाई हामीले समुद्र पार गऱ्यौं; तथा फिरौन र उसका लस्करहरूले कुअभिप्राय र द्वेषभावका साथ तिनीहरूको पीछा गरेका थिए । अत: जब उसलाई डुबाउने सङ्कटले घेऱ्यो, तब उसले भन्यो, "जसप्रति इजरायलका सन्तानले विश्वास गर्छन् उनीबाहेक अन्य कोही उपास्य छैन भनी म विश्वास गर्छु, म (पनि) तिनीहरूमध्ये बन्छु जुन व्यक्तिहरू (उनीप्रति) समर्पित छन् ।"

وَجَاوَزْنَا بِبَنِيٓ إِسْرَآءِيلَ الْبَحْرَ
فَأَتْبَعَهُمْ فِرْعَوْنُ وَجُنُودُهُ بَغْيًا
وَّعَدْوًا ۖ حَتّٰىٓ إِذَآ أَدْرَكَهُ الْغَرَقُ ۙ قَالَ
اٰمَنْتُ أَنَّهُ لَآ إِلٰهَ إِلَّا الَّذِيٓ اٰمَنَتْ
بِهِ بَنُوٓا إِسْرَآءِيلَ وَأَنَا مِنَ
الْمُسْلِمِينَ ﴿٩١﴾

९२. के ! अब ! वस्तुत: यसअघि भने तिमी अवज्ञा गर्दै आएका थियौ तथा ती व्यक्तिहरूमध्ये थियौ जसले उपद्रव गर्ने गर्छन् ।

آٰلْئٰنَ وَقَدْ عَصَيْتَ قَبْلُ وَكُنْتَ مِنَ
الْمُفْسِدِينَ ﴿٩٢﴾

९३. अत: आज हामी तिमीलाई तिम्रो शरीरको रूपमा (मात्र) उद्धार गर्नेछौं ताकि तिमी तिमीभन्दा पछि आउने व्यक्तिहरूका निम्ति एउटा चिह्न बन्न सक । तथा निश्चय नै मानवजातिमध्ये धेरैजसो व्यक्तिहरू ह्यम्रा चिह्नहरूबाट बेपरवाह रहेका छन् ।

فَالْيَوْمَ نُنَجِّيكَ بِبَدَنِكَ لِتَكُونَ لِمَنْ
خَلْفَكَ اٰيَةً ۚ وَإِنَّ كَثِيرًا مِّنَ النَّاسِ
عَنْ اٰيٰتِنَا لَغٰفِلُونَ ﴿٩٣﴾

९४. तथा हामीले इजरायलका सन्तानलाई एउटा उत्तम निवासस्थान प्रदान गऱ्यौं, तथा हामीले तिनीहरूलाई असल वस्तुहरू समेत प्रदान गऱ्यौं, तथा तिनीहरूसमक्ष ज्ञानको आगमन नहुञ्जेलसम्म तिनीहरूले मतभेद गरेनन् । नि:सन्देह, तिम्रा प्रतिपालकले पुनरुत्थानका दिन तिनीहरूकाबीच त्यस कुराको निर्णय

وَلَقَدْ بَوَّأْنَا بَنِيٓ إِسْرَآءِيلَ مُبَوَّأَ
صِدْقٍ وَّرَزَقْنٰهُمْ مِّنَ الطَّيِّبٰتِ ۚ فَمَا
اخْتَلَفُوا حَتّٰى جَآءَهُمُ الْعِلْمُ ۚ إِنَّ
رَبَّكَ يَقْضِي بَيْنَهُمْ يَوْمَ الْقِيٰمَةِ
فِيمَا كَانُوا فِيهِ يَخْتَلِفُونَ ﴿٩٤﴾

गर्नेछन् जुन कुरामा तिनीहरू मतभेद गर्थे

فَإِنْ كُنْتَ فِي شَكٍّ مِّمَّآ أَنْزَلْنَآ إِلَيْكَ فَسْئَلِ الَّذِيْنَ يَقْرَءُوْنَ الْكِتٰبَ مِنْ قَبْلِكَ لَقَدْ جَآءَكَ الْحَقُّ مِنْ رَّبِّكَ فَلَا تَكُوْنَنَّ مِنَ الْمُمْتَرِيْنَ ﴿٩٤﴾

९५. तथा यदि तिमी हामीले तिमीमाथि अवतीर्ण गरेका कुराका सम्बन्धमा सन्दिग्ध छौ भने, जुन व्यक्तिहरू तिमीभन्दा पहिला पुस्तक पढ्दै आएका छन् तिनीहरूलाई सोध । निःसन्देह, तिम्रा प्रतिपालकका तर्फबाट तिमीसमक्ष सत्यको आगमन भएको छ; त्यसकारण सन्देह गर्ने व्यक्तिहरूमध्येको नबन ।

وَلَا تَكُوْنَنَّ مِنَ الَّذِيْنَ كَذَّبُوْا بِاٰيٰتِ اللّٰهِ فَتَكُوْنَ مِنَ الْخٰسِرِيْنَ ﴿٩٥﴾

९६. तथा तिमी ती व्यक्तिहरूमध्ये नबन जसले अल्लाहका चिह्नरुलाई अस्वीकार गरे, अन्यथा तिमी घाटाग्रस्त व्यक्तिहरूमध्येको बन्नेछौ ।

إِنَّ الَّذِيْنَ حَقَّتْ عَلَيْهِمْ كَلِمَتُ رَبِّكَ لَا يُؤْمِنُوْنَ ﴿٩٦﴾

९७. निश्चय नै, जुन व्यक्तिहरू विरुद्ध तिम्रा प्रतिपालकको वचन सत्य प्रमाणित भएको छ तिनीहरूले कदापि विश्वास गर्नेछैनन् ।

وَلَوْ جَآءَتْهُمْ كُلُّ اٰيَةٍ حَتّٰى يَرَوُا الْعَذَابَ الْأَلِيْمَ ﴿٩٧﴾

९८. तिनीहरूसमक्ष चाहे हरप्रकारको चिह्न आओस् जवसम्म तिनीहरूले पीडादायक दण्ड देख्दैनन् (तिनीहरूले विश्वास; गर्नेछैन) ।

فَلَوْلَا كَانَتْ قَرْيَةٌ اٰمَنَتْ فَنَفَعَهَآ إِيْمَانُهَآ إِلَّا قَوْمَ يُوْنُسَ لَمَّآ اٰمَنُوْا كَشَفْنَا عَنْهُمْ عَذَابَ الْخِزْيِ فِي الْحَيٰوةِ الدُّنْيَا وَمَتَّعْنٰهُمْ إِلٰى حِيْنٍ ﴿٩٨﴾

९९. युनुसका मानिसहरूबाहेक (अन्य) कुनै जातिका मानिसहरू यस्ता किन भएनन् जसले विश्वास स्थापना गरेका हुन् र तिनीहरूको विश्वासले तिनीहरूलाई लाभ पुऱ्याएको होस्? जब तिनीहरूले विश्वास गरे, हामीले यस सांसारिक जीवनमा तिनीहरूबाट अपमानजनक दण्ड निवारण गऱ्यौं, तथा केही समयका निम्ति तिनीहरूलाई जीविका प्रदान गऱ्यौं ।

وَلَوْ شَآءَ رَبُّكَ لَاٰمَنَ مَنْ فِي الْأَرْضِ كُلُّهُمْ جَمِيْعًا أَفَأَنْتَ تُكْرِهُ النَّاسَ حَتّٰى يَكُوْنُوْا مُؤْمِنِيْنَ ﴿٩٩﴾

१००. तथा यदि तिम्रा प्रतिपालकले आफ्नो इच्छा (बलपुर्वक) लागू गर्थे भने, निश्चय नै, पृथ्वीमा रहेका सबै व्यक्तिहरूले एकसाथ विश्वास स्थापना

गर्ने थिए । त्यसो भए के तिमी मानिसहरूलाई विश्वासी बन्न कर गर्छौ त?

१०१. अल्लाहको अनुमतिबिना कुनै आत्माविश्वास स्थापना गर्न सक्दैन । तथा ती व्यक्तिहरूमाथि उनले (आफ्नो) प्रकोप (अवतीर्ण) गर्छन् जो व्यक्तिहरू आफ्नो विवेक प्रयोग गर्दैनन् ।

وَمَا كَانَ لِنَفْسٍ اَنْ تُؤْمِنَ اِلَّا بِاِذْنِ اللّٰهِ ؕ وَيَجْعَلُ الرِّجْسَ عَلَى الَّذِيْنَ لَا يَعْقِلُوْنَ ﴿١٠٠﴾

१०२. तिमी भन, "आकाशमण्डल तथा पृथ्वीमा के (भइरहे) छ त्यसप्रति विचार गर ।" परन्तु जुन व्यक्तिहरूले विश्वास गर्नेछैनन् चिह्नहरू र सतर्ककारीहरूले तिनीहरूलाई कुनै लाभ पुऱ्याउन सक्दैनन्

قُلِ انْظُرُوْا مَاذَا فِى السَّمٰوٰتِ وَالْاَرْضِ ؕ وَمَا تُغْنِى الْاٰيٰتُ وَالنُّذُرُ عَنْ قَوْمٍ لَّا يُؤْمِنُوْنَ ﴿١٠١﴾

१०३. त्यसोभए के तिनीहरू प्रतीक्षा गरिरहेछन्, परन्तु त्यसैप्रकारका दिनहरूको जस्ता उनीहरूमाथि आएका थिए जो (व्यक्तिहरू) तिनीहरूभन्दा पहिला बितेका थिए? तिमी भन, त्यसो भए तिमीहरू प्रतीक्षा गर, तथा म पनि तिमीहरूसित प्रतीक्षाकारी व्यक्तिहरूमध्ये रहेको छु ।"

فَهَلْ يَنْتَظِرُوْنَ اِلَّا مِثْلَ اَيَّامِ الَّذِيْنَ خَلَوْا مِنْ قَبْلِهِمْ ؕ قُلْ فَانْتَظِرُوْٓا اِنِّىْ مَعَكُمْ مِّنَ الْمُنْتَظِرِيْنَ ﴿١٠٢﴾

१०४. त्यसपछि हामी हाम्रा सन्देश-वाहकहरूको तथा विश्वासीजन- हरूको रक्षा गर्नेछौं । यसै प्रकार (सदा हुँदै आएको छ); विश्वासीहरूलाई रक्षा गर्ने जिम्मेवारी हाम्रै रहेको छ ।

ثُمَّ نُنَجِّىْ رُسُلَنَا وَالَّذِيْنَ اٰمَنُوْا كَذٰلِكَ ۚ حَقًّا عَلَيْنَا نُنْجِ الْمُؤْمِنِيْنَ ﴿١٠٣﴾

१०५. तिमी भन, "हे मानिसहरू हो ! यदि मेरो धर्मका सम्वन्धमा तिनीहरूलाई कुनै सन्देह रहेमा, (के ज्ञात राख भने) अल्लाहबाहेक जसको तिमीहरू उपासना गर्छौ म त्यसको उपासना गर्दिन, म त (केवल) तिनै अल्लाहको उपासना गर्छु जसले तिमीहरूलाई मृत्यु प्रदान गर्छन्, तथा मलाई त विश्वासीहरूमध्ये बन्ने आदेश दिइएको छ ।

قُلْ يٰٓاَيُّهَا النَّاسُ اِنْ كُنْتُمْ فِىْ شَكٍّ مِّنْ دِيْنِىْ فَلَآ اَعْبُدُ الَّذِيْنَ تَعْبُدُوْنَ مِنْ دُوْنِ اللّٰهِ وَلٰكِنْ اَعْبُدُ اللّٰهَ الَّذِىْ يَتَوَفّٰىكُمْ ۖۚ وَاُمِرْتُ اَنْ اَكُوْنَ مِنَ الْمُؤْمِنِيْنَ ﴿١٠٤﴾

وَأَنْ أَقِمْ وَجْهَكَ لِلدِّينِ حَنِيفًا ۚ
وَلَا تَكُونَنَّ مِنَ الْمُشْرِكِينَ ﴿١٠٥﴾

१०६. तथा (मलाई के पनि भन्ने आदेश दिइएको छ भने:) "तिमी अल्लाहका एकनिष्ठ भक्त बनी सत्यधर्मतर्फ आफ्नो ध्यान केन्द्रित गर, तथा तिमी तिनीहरूमध्ये नबन जसले (उनका) भागीदार तुल्याउने गर्छन् ।

وَلَا تَدْعُ مِن دُونِ اللَّهِ مَا لَا يَنفَعُكَ
وَلَا يَضُرُّكَ ۖ فَإِن فَعَلْتَ فَإِنَّكَ إِذًا
مِّنَ الظَّالِمِينَ ﴿١٠٦﴾

१०७. तथा तिमी अल्लाहबाहेक अन्य कसैलाई नपुकार जसले न तिम्रो भलो गर्न सक्छ न त हानि नै । तथा यदि तिमीले त्यसो गऱ्यौ भने, तिमी अवश्य अत्याचारी व्यक्तिहरू मध्ये हुनेछौ ।"

وَإِن يَمْسَسْكَ اللَّهُ بِضُرٍّ فَلَا كَاشِفَ
لَهُ إِلَّا هُوَ ۖ وَإِن يُرِدْكَ بِخَيْرٍ فَلَا رَادَّ
لِفَضْلِهِ ۚ يُصِيبُ بِهِ مَن يَشَاءُ مِنْ
عِبَادِهِ ۚ وَهُوَ الْغَفُورُ الرَّحِيمُ ﴿١٠٧﴾

१०८. तथा यदि अल्लाहले तिमीलाई कुनै कष्ट पुऱ्याएमा, उनीबाहेक कसैले त्यसको निवारण गर्न सक्नेछैन; तथा यदि उनले तिम्रो मङ्गल चाहेमा, उनको अनुग्रहलाई रोक्न सक्ने कोही छैन । आफ्ना भक्तहरूमध्ये जसलाई उनले इच्छा गर्छन् त्यससम्म त्यसलाई (अनुग्रहलाई) पुऱ्याउँछन् । तथा उनी परम क्षमाशील, परम दानशील रहेका छन् ।

قُلْ يَا أَيُّهَا النَّاسُ قَدْ جَاءَكُمُ الْحَقُّ
مِن رَّبِّكُمْ ۖ فَمَنِ اهْتَدَىٰ فَإِنَّمَا
يَهْتَدِي لِنَفْسِهِ ۖ وَمَن ضَلَّ فَإِنَّمَا
يَضِلُّ عَلَيْهَا ۖ وَمَا أَنَا عَلَيْكُم بِوَكِيلٍ ﴿١٠٨﴾

१०९. तिमी भन, "हे मानिसहरू हो, तिमीहरू समक्ष तिमीहरूका प्रतिपालकका तर्फबाट अब सत्यको आगमन भइसकेको छ । अत: जसले मार्गदर्शनको अनुसरण गर्छ, उसले त्यसलाई आफ्नै आत्माको मङ्गल साधनका निम्ति अनुसरण गर्नेछ, तथा जो व्यक्ति पथभ्रष्ट हुन्छ, त्यसको पथभ्रष्टताले त्यसैलाई हानि पुऱ्याउँछ । तथा म तिमीहरूको संरक्षक रहेको छैन ।"

وَاتَّبِعْ مَا يُوحَىٰ إِلَيْكَ وَاصْبِرْ حَتَّىٰ
يَحْكُمَ اللَّهُ ۚ وَهُوَ خَيْرُ الْحَاكِمِينَ ﴿١٠٩﴾

११०. तथा जुन कुरा तिमीप्रति अवतीर्ण गरिन्छ, त्यसैको अनुसरण गर तथा जबसम्म अल्लाहले आफ्नो निर्णय गर्दैनन् (तबसम्म) धैर्यधारण गर । तथा उनी नै सर्वोत्कृष्ट निर्णायक रहेका छन् ।

سُوْرَةُ هُوْدٍ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ مِائَةٌ وَّاَرْبَعٌ وَّعِشْرُوْنَ اٰيَةً وَّعَشَرَةُ رُكُوْعَاتٍ

## हूद्
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु अल्लाहको नाममा

الٓرٰ تِلْكَ كِتٰبٌ اُحْكِمَتْ اٰيٰتُهٗ ثُمَّ فُصِّلَتْ مِنْ لَّدُنْ حَكِيْمٍ خَبِيْرٍ ②

२. अलिफ लाम रा* यो यस्तो पुस्तक हो जसका आयातहरूलाई दृढ तुल्याइएको छ र दोषरहित बनाइएको छ तथा त्यसपछि विस्तृतरूपमा तिनीहरूको व्याख्या गरिएको छ । (यो) उनै तत्त्वज्ञ, (तथा) परिज्ञाता (अल्लाहका) तर्फबाट भएको छ ।

اَلَّا تَعْبُدُوْٓا اِلَّا اللّٰهَ ۭ اِنَّنِيْ لَكُمْ مِّنْهُ نَذِيْرٌ وَّبَشِيْرٌ ③

३. (यसले) तिमीहरू केवल अल्लाहको उपासना गर । म तिमीहरूका निम्ति एकजना सचेतक तथा उनका तर्फबाट एकजना सुभसन्देशवाहक हुँ -भन्ने शिक्षा दिन्छ) ।

وَّاَنِ اسْتَغْفِرُوْا رَبَّكُمْ ثُمَّ تُوْبُوْٓا اِلَيْهِ يُمَتِّعْكُمْ مَّتَاعًا حَسَنًا اِلٰٓى اَجَلٍ مُّسَمًّى وَّيُؤْتِ كُلَّ ذِيْ فَضْلٍ فَضْلَهٗ ۭ وَاِنْ تَوَلَّوْا فَاِنِّىْٓ اَخَافُ عَلَيْكُمْ عَذَابَ يَوْمٍ كَبِيْرٍ ④

४. तथा यसै प्रकार तिमीहरू आफ्ना अल्लाहसित क्षमायाचना गर, (तथा) पुन: उनैतर्फ फर्क । उनले तिमीहरूलाई एउटा निर्धारित समयसम्मका निम्ति उत्तमरूपले जीवनवृत्ति प्रदान गर्नेछन् । तथा प्रत्येक गुणवानलाई उनले आफ्नो करुणाद्वारा धन्य गर्नेछन् । तथा यदि तिमीहरू विमुख भयौ भने, निश्चय नै, म तिमीहरूमाथि (आउने) एउटा असाधारण दिनको दण्डप्रति डराउँछु

اِلَى اللّٰهِ مَرْجِعُكُمْ ۚ وَهُوَ عَلٰي كُلِّ شَيْءٍ قَدِيْرٌ ⑤

५. अल्लाहतर्फ नै तिमीहरूको प्रत्यावर्तन हुनेछ; तथा सम्पूर्ण कुराहरूमाथि उनी पूर्ण सामर्थ्यवान रहेका छन् ।

---

* म अल्लाह सर्वद्रष्टा हुँ ।

أَلَآ إِنَّهُمْ يَثْنُونَ صُدُورَهُمْ لِيَسْتَخْفُوا مِنْهُ ۚ أَلَا حِينَ يَسْتَغْشُونَ ثِيَابَهُمْ يَعْلَمُ مَا يُسِرُّونَ وَمَا يُعْلِنُونَ ۚ إِنَّهُ عَلِيمٌ بِذَاتِ الصُّدُورِ ۝

६. सुन, निश्चय नै, तिनीहरू स्वयम्लाई उनीबाट लुकाउनका निम्ति आफ्नो अन्तस्करणलाई मोड्ने गर्छन् । सुन, जब तिनीहरू स्वयम्लाई आफ्ना वस्त्रहरूद्वारा ढाक्छ (तब पनि) जुन कुराहरू तिनीहरूले लुकाउँछन् र जुन कुराहरू प्रकट गर्छन् उनले (सबै) जान्दछन् । निश्चय नै, (तिनीहरूका) अन्तस्करणमा रहेका कुराहरूप्रति उनी पूर्ण विदित रहेका छन् ।

وَمَا مِن دَآبَّةٍ فِي الْأَرْضِ إِلَّا عَلَى اللَّهِ رِزْقُهَا وَيَعْلَمُ مُسْتَقَرَّهَا وَمُسْتَوْدَعَهَا ۚ كُلٌّ فِي كِتَابٍ مُّبِينٍ ۝

७. तथा पृथ्वीमा कुनै हिड्डुल गर्ने प्राणी यस्तो छैन जसको जीविका(को भार) अल्लाहमाथि रहेको नहोस् । तथा उनले त्यसको अस्थायी निवास र स्थायी घरलाई जान्दछन् । (यी) सबै (कुराहरू) एउटा स्पष्ट पुस्तकमा (लिपिवद्ध) रहेका छन् ।

وَهُوَ الَّذِي خَلَقَ السَّمَاوَاتِ وَالْأَرْضَ فِي سِتَّةِ أَيَّامٍ وَكَانَ عَرْشُهُ عَلَى الْمَاءِ لِيَبْلُوَكُمْ أَيُّكُمْ أَحْسَنُ عَمَلًا ۗ وَلَئِن قُلْتَ إِنَّكُم مَّبْعُوثُونَ مِن بَعْدِ الْمَوْتِ لَيَقُولَنَّ الَّذِينَ كَفَرُوا إِنْ هَٰذَا إِلَّا سِحْرٌ مُّبِينٌ ۝

८. तथा ती उनी नै हुन् जसले आकाशमण्डल र पृथ्वीलाई छ समयावधिमा सिर्जना गरे, तथा उनको सिंहासन पानीमाथि विद्यमान छ, ताकि उनले व्यवहारमा तिमीहरूमध्ये को उत्तम रहेको छ भन्ने कुरालाई (प्रकाशमा ल्याउन) तिमीहरूलाई जाँचून् । तथा यदि तिमी भन्छौ, "तिमीहरूलाई अवश्य मृत्युपश्चात् उत्थान गरिनेछ," तब अविश्वासी व्यक्तिहरूले निःसन्देश भन्नेछन्, "यो त केवल एउटा स्पष्ट छल रहेको छ ।"

وَلَئِنْ أَخَّرْنَا عَنْهُمُ الْعَذَابَ إِلَىٰ أُمَّةٍ مَّعْدُودَةٍ لَّيَقُولُنَّ مَا يَحْبِسُهُ ۗ أَلَا يَوْمَ يَأْتِيهِمْ لَيْسَ مَصْرُوفًا عَنْهُمْ وَحَاقَ بِهِم مَّا كَانُوا بِهِ يَسْتَهْزِئُونَ ۝

९. तथा यदि हामीले एउटा निर्धारित समयसम्मका निम्ति तिनीहरूको दण्ड स्थगित गर्‍यौं भने, तिनीहरूले अवश्य के भन्नेछन् भने, "यसलाई कस्ले रोक्यो?" सुन, निश्चय नै जुन दिन तिनीमाथि त्यो दण्ड आइलाग्ने छ, त्यसलाई तिनीहरूबाट हटाइने छैन, तथा जुन सम्बन्धमा तिनीहरू ठट्टा गर्ने गर्थे त्यसले तिनीहरूलाई घेर्नेछ ।

وَلَئِنْ أَذَقْنَا الْإِنسَانَ مِنَّا رَحْمَةً ثُمَّ نَزَعْنَاهَا مِنْهُ إِنَّهُ لَيَئُوسٌ كَفُورٌ ﴿١٠﴾

१०. तथा यदि हामीले मानिसलाई हाम्रा तर्फबाट अनुग्रहको स्वाद चखाएर पुन: त्यसलाई उसबाट विच्छेद गरेमा, निश्चय नै उ निराश, अकृतज्ञ हुन पुग्छ ।

وَلَئِنْ أَذَقْنَاهُ نَعْمَاءَ بَعْدَ ضَرَّاءَ مَسَّتْهُ لَيَقُولَنَّ ذَهَبَ السَّيِّئَاتُ عَنِّي ۚ إِنَّهُ لَفَرِحٌ فَخُورٌ ﴿١١﴾

११. तथा यदि उसप्रति आएको कुनै सङ्कटपश्चात् हामीले उसलाई वैभवको स्वाद चखाएमा, उसले निश्चयपूर्वक के भन्नेछ भने, “मेरा सबै दु:खहरु सकिए ।” हेर त ! त्यो व्यक्ति अभिमानी, अहङ्कारी रहेको छ ।

إِلَّا الَّذِينَ صَبَرُوا وَعَمِلُوا الصَّالِحَاتِ أُولَٰئِكَ لَهُم مَّغْفِرَةٌ وَأَجْرٌ كَبِيرٌ ﴿١٢﴾

१२. ती व्यक्तिहरूबाहेक जसले धैर्यधारण गर्छन् तथा पुण्यकार्य गर्छन् । तिनीहरूलाई नै क्षमा तथा महान प्रतिदान प्राप्त हुनेछ ।

فَلَعَلَّكَ تَارِكٌ بَعْضَ مَا يُوحَىٰ إِلَيْكَ وَضَائِقٌ بِهِ صَدْرُكَ أَن يَقُولُوا لَوْلَا أُنزِلَ عَلَيْهِ كَنزٌ أَوْ جَاءَ مَعَهُ مَلَكٌ ۚ إِنَّمَا أَنتَ نَذِيرٌ ۚ وَاللَّهُ عَلَىٰ كُلِّ شَيْءٍ وَكِيلٌ ﴿١٣﴾

१३. (तिनीहरू के अपेक्षा गर्छन् भने) सम्भवत: तिमीले अब तिमीप्रति आकाशवाणी गरिएका कुराहरूमध्ये केही कुराहरूलाई त्याग्नेछौ; तथा त्यस कुराले गर्दा कारण तिम्रो छाती सङ्कीर्ण भइरहेछ, किनभने तिनीहरू भन्छन्, “उसप्रति कुनै खजाना नै किन अवतीर्ण गरिएन अथवा उससित कुनै देवदूत किन आएन त? वस्तुत: तिमी केवल एकजना सचेतक हौ, तथा अल्लाह सम्पूर्ण वस्तुहरूका संरक्षक रहेका छन् ।

أَمْ يَقُولُونَ افْتَرَاهُ ۖ قُلْ فَأْتُوا بِعَشْرِ سُوَرٍ مِّثْلِهِ مُفْتَرَيَاتٍ وَادْعُوا مَنِ اسْتَطَعْتُم مِّن دُونِ اللَّهِ إِن كُنتُمْ صَادِقِينَ ﴿١٤﴾

१४. के तिनीहरू “उसले यसलाई गढेको हो” भन्छन्? तिमी भन, “त्यसो भए तिमीहरू गढेर यसजस्तै दसवटा सूरा:हरू प्रस्तुत गर, तथा यदि तिमीहरू साँचा हौ भने अल्लाहबाहेक (सहयोगका निम्ति) जसलाई सक्छौ बोलाऊ ।”

فَإِلَّمْ يَسْتَجِيبُوا لَكُمْ فَاعْلَمُوا أَنَّمَا أُنزِلَ بِعِلْمِ اللَّهِ وَأَن لَّا إِلَٰهَ إِلَّا هُوَ ۖ فَهَلْ أَنتُم مُّسْلِمُونَ ﴿١٥﴾

१५. तथा यदि तिनीहरूले तिमीहरूलाई उत्तर दिएनन् भने, यसलाई अल्लाहको ज्ञानले (परिपूर्णरूपमा) अवतीर्ण गरिएको छ

तथा उनीबाहेक अन्य कोही उपास्य छैन भनी जान । त्यसो भए के तिमीहरू आज्ञाकारी बन्छौ त?

مَنْ كَانَ يُرِيدُ الْحَيٰوةَ الدُّنْيَا وَزِينَتَهَا نُوَفِّ إِلَيْهِمْ أَعْمَالَهُمْ فِيهَا وَهُمْ فِيهَا لَا يُبْخَسُونَ ﴿١٦﴾

१६. जसले यस भौतिक जीवन तथा यसको आल्हादको कामना गर्छन्, तिनीहरूलाई आफ्नो क्रियाकलापको पूर्ण प्रतिदान यसै (जीवन) मा हामी प्रदान गर्नेछौं तथा त्यसमा तिनीहरूप्रति अन्याय हुनेछैन ।

أُولٰٓئِكَ الَّذِينَ لَيْسَ لَهُمْ فِي الْآخِرَةِ إِلَّا النَّارُ ۖ وَحَبِطَ مَا صَنَعُوا فِيهَا وَبٰطِلٌ مَّا كَانُوا يَعْمَلُونَ ﴿١٧﴾

१७. ती उनीहरू नै हुन् जसलाई परलोकमा अग्निबाहेक अन्य केही प्राप्त हुनेछैन, तथा यस (जीवन) को तिनीहरूको कमाई (त्यहाँ) काम लाग्ने छैन, तथा तिनीहरूले गर्ने गरेका कार्यहरू व्यर्थ जानेछन् ।

أَفَمَنْ كَانَ عَلٰى بَيِّنَةٍ مِّنْ رَّبِّهِ وَيَتْلُوهُ شَاهِدٌ مِّنْهُ وَمِنْ قَبْلِهِ كِتٰبُ مُوسٰى إِمَامًا وَّرَحْمَةً ۚ أُولٰٓئِكَ يُؤْمِنُونَ بِهِ ۚ وَمَنْ يَّكْفُرْ بِهِ مِنَ الْأَحْزَابِ فَالنَّارُ مَوْعِدُهُ ۚ فَلَا تَكُ فِي مِرْيَةٍ مِّنْهُ ۚ إِنَّهُ الْحَقُّ مِنْ رَّبِّكَ وَلٰكِنَّ أَكْثَرَ النَّاسِ لَا يُؤْمِنُونَ ﴿١٨﴾

१८. अतः जुन व्यक्तिलाई आफ्ना अल्लाहका तर्फबाट एउटा स्पष्ट प्रमाण (प्राप्त छ), तथा (जसको सत्यतालाई साबित गर्नका निम्ति) उनका तर्फबाट उसपछि एउटा साक्षी आउनेछ, तथा जसअघि मार्गदर्शन र करुणास्वरूप मूसाको पुस्तक आइसकेको थियो, (के त्यो व्यक्ति धोकेबाज हुन सक्छ)? उनीहरू* त्यसप्रति विश्वास

---

* 'उनीहरू' भन्ने उक्त सर्वनामले कसलाई बुझाउछ भन्ने कुराको निर्णय गर्नु अति आवश्यक छ । उक्त आयतमा उल्लेखित केवल दुई व्यक्तिहरूमध्ये एक पवित्र नबी अल्लाहको शान्ति र आर्शीवाद उनीमाथि रहोस) तथा दास्रोचाहिँ उनीपछि आउने ईश्वरीय साक्षी रहेको छ । जहाँसम्म मुसाको सम्बन्ध छ, यहाँ उनको नभएर उनको पुस्तकको उल्लेख छ । किनभने पुस्तकहरूले विश्वास गर्दैनन् त्यसकारण उक्त आयतमा एउटा मानिसहरूको समूहतर्फ सङ्केत गरिएको छ भन्ने कुरो मात्र हामीले रोज्न बाँकी रहन्छ । अतः उक्त सर्वनामले केवल नबीलाई मात्र नभएर उनको अधीनस्थ साक्षी र अन्य केही व्यक्तिहरूलाई समेत बुझाउँछ ।

यसै सन्दर्भमा उपरोक्त आयतको के पनि अर्थ लिन सकिन्छ भने केवल नबी र उनको साक्षीले मात्र नबीको सत्यताप्रति विश्वास गरी त्यसको सत्यता प्रमाणित गर्दैनन् अपितु तिनीहरूका अनुयायीहरूको एउटा ठूलो सङ्ख्याले समेत त्यही नै

गर्छन्, तथा विभिन्न सम्प्रदायहरूमध्ये जसले त्यसलाई अस्वीकार गर्छ, अग्नि त्यसको प्रतिश्रुत स्थान हुनेछ । अत: तिमी यसबारे कुनै सन्देह नगर । यो निस्सन्देह तिम्रा अल्लाहका तर्फबाट सत्य रहेको छ; परन्तु अधिकतर मानिसहरू विश्वास गर्दैनन्

وَمَنْ اَظْلَمُ مِمَّنِ افْتَرٰى عَلَى اللّٰهِ كَذِبًا ؕ اُولٰٓئِكَ يُعْرَضُوْنَ عَلٰى رَبِّهِمْ وَيَقُوْلُ الْاَشْهَادُ هٰٓؤُلَآءِ الَّذِيْنَ كَذَبُوْا عَلٰى رَبِّهِمْ ۚ اَلَا لَعْنَةُ اللّٰهِ عَلَى الظّٰلِمِيْنَ ﴿١٨﴾

१९. तथा जसले अल्लाहबिरुद्ध मिथ्या गढ्छ त्यो व्यक्तिभन्दा अधिक अत्याचारी अन्य को हुन सक्छ र? यस्ता व्यक्तिहरूलाई तिनीहरूका अल्लाहका सामुन्ने पेस गरिनेछ, तथा साक्षीहरूले भन्नेछन्, “यिनीहरू नै हुन् जसले आफ्ना अल्लाहविरुद्ध मिथ्या गढेका थिए ।” सुन,– निश्चय नै, अत्याचारीहरू माथि अल्लाहको श्राप रहेको छ;

الَّذِيْنَ يَصُدُّوْنَ عَنْ سَبِيْلِ اللّٰهِ وَيَبْغُوْنَهَا عِوَجًا ؕ وَهُمْ بِالْاٰخِرَةِ هُمْ كٰفِرُوْنَ ﴿١٩﴾

२०. जुन व्यक्तिहरूले (मानिसहरूलाई) अल्लाहका मार्गबाट विमुख तुल्याउछन् तथा त्यसमा विकृति ल्याउन चाहन्छन् । तथा यिनीहरू नै हुन् जसले परलोकप्रति अविश्वास गर्छन् ।

اُولٰٓئِكَ لَمْ يَكُوْنُوْا مُعْجِزِيْنَ فِى الْاَرْضِ وَمَا كَانَ لَهُمْ مِّنْ دُوْنِ اللّٰهِ مِنْ اَوْلِيَآءَ ۘ يُضٰعَفُ لَهُمُ الْعَذَابُ ؕ مَا كَانُوْا يَسْتَطِيْعُوْنَ السَّمْعَ وَمَا كَانُوْا يُبْصِرُوْنَ ﴿٢٠﴾

२१. यस्ता व्यक्तिहरूले पृथ्वीमा न कहिल्यै -अल्लाहको योजनालाई) व्यर्थ तुल्याउन सक्छन् न त अल्लाहलाई छाडी तिनीहरूको अरू कुनै मित्रहरू हुन्छन् । तिनीहरूलाई दुईगुणा दण्ड मिल्नेछ । तिनीहरू न तिनीहरु सुन्न सक्छन्, न देख्न नै सक्छन् ।

---

गर्छन् ।

के कुरा स्मरणीय रहेको छ भने कहिलेकाहीँ महान नबीहरूको उल्लेख एक व्यक्तिस्वरूप एक वचनमा गरिन्छ परन्तु तिनीहरूमा सङ्ख्या बृद्धि गर्ने र फैलाउने सम्भाव्य शक्ति हुन्छ । तिनीहरूको उल्लेख एउटा ‘उम्मा:’ ( اُمَّةً ), तिनीहरूभित्रै मानिसहरूको एउटा ठूलो सम्प्रदाय (स्वरूप) हुन्छ । उदाहरणको लागि परिच्छेद १६ आयत १२१ हेर्नुहोस् ।

केही व्यक्तिहरूले भने ‘उनीहरू’ (اُولٰٓئِكَ) सर्वनामले मूसा र उनका मानिसहरू (सम्प्रदाय) लाई बुझाउँछ भन्ने अर्थ लिएका छन् ।

أُولَٰٓئِكَ الَّذِيْنَ خَسِرُوْٓا أَنْفُسَهُمْ وَضَلَّ عَنْهُمْ مَّا كَانُوْا يَفْتَرُوْنَ ﴿٢٢﴾

२२. ती व्यक्तिहरू नै हुन् जसले आफ्नो आत्मालाई बर्बाद गरे, तथा जुन कुरा तिनीहरूले गढेका थिए त्यो तिनीहरूबाट गुम्न पुग्नेछ ।

لَا جَرَمَ أَنَّهُمْ فِي الْاٰخِرَةِ هُمُ الْأَخْسَرُوْنَ ﴿٢٣﴾

२३. निश्चय नै, ती उनीहरू नै हुन् जसले परलोकमा सर्वाधिक घाटा उठाउनेछन् ।

إِنَّ الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ وَأَخْبَتُوْٓا إِلٰى رَبِّهِمْ ۙ أُولَٰٓئِكَ أَصْحٰبُ الْجَنَّةِ ۚ هُمْ فِيْهَا خٰلِدُوْنَ ﴿٢٤﴾

२४. नि:सन्देह ती व्यक्तिहरू जसले विश्वास गर्छन् तथा पुण्य कार्य गर्छन् र स्वयम्लाई आफ्ना अल्लाहका सामुन्ने नतमस्तक तुल्याउँछन्– यिनीहरू नै स्वर्गका बासिन्दा हुन्; त्यहाँ तिनीहरू सदा बसोबास गर्नेछन् ।

مَثَلُ الْفَرِيْقَيْنِ كَالْأَعْمٰى وَالْأَصَمِّ وَالْبَصِيْرِ وَالسَّمِيْعِ ۚ هَلْ يَسْتَوِيٰنِ مَثَلًا ۚ أَفَلَا تَذَكَّرُوْنَ ﴿٢٥﴾

२५. ती दुई समूहको मामिला अन्धो र कानो, तथा नेत्रवान र सुन्न सक्ने व्यक्तिको अवस्था -अनुरूप) रहेको छ । के ती दुबैको अवस्था एकै प्रकारको हुन सक्छ र? अत: के तिमीहरू बुझ्देनौ त?

وَلَقَدْ أَرْسَلْنَا نُوْحًا إِلٰى قَوْمِهٖٓ ۚ إِنِّيْ لَكُمْ نَذِيْرٌ مُّبِيْنٌ ﴿٢٦﴾

२६. तथा हामीले नूहलाई उनका (जातिका) मनिसहरूतर्फ पठायौं, (तथा उनले भने), "सत्य कुरा हो, म तिमीहरूका निम्ति एक खुल्लमखुल्ला सच्चेतकस्वरूप हुँ,

أَنْ لَّا تَعْبُدُوْٓا إِلَّا اللّٰهَ ۖ إِنِّيْٓ أَخَافُ عَلَيْكُمْ عَذَابَ يَوْمٍ أَلِيْمٍ ﴿٢٧﴾

२७. "अत: तिमीहरू अल्लाहलाई छाडी अन्य कसैको उपासना नगर । वास्तवमा म तिमीहरूका निम्ति पीडादायक दिनको दण्डप्रति डराउँछु ।"

فَقَالَ الْمَلَأُ الَّذِيْنَ كَفَرُوْا مِنْ قَوْمِهٖ مَا نَرٰىكَ إِلَّا بَشَرًا مِّثْلَنَا وَمَا نَرٰىكَ اتَّبَعَكَ إِلَّا الَّذِيْنَ هُمْ أَرَاذِلُنَا بَادِيَ الرَّأْيِ ۚ وَمَا نَرٰى لَكُمْ عَلَيْنَا مِنْ فَضْلٍ بَلْ نَظُنُّكُمْ كٰذِبِيْنَ ﴿٢٨﴾

२८. उनका जातिका अविश्वासी मुखियाहरूले उत्तर दिए, "हामी त तिमीलाई हामीजस्तै एउटा मानिसबाहेक अरू केही ठान्दैनौं, तथा हामीमध्ये साधारणतया: हाम्रा दृष्टिमा छुद्र ठानिएका व्यक्तिहरूबाहेक अन्य कसैले तिम्रो अनुसरण गरेको हामी देख्दैनौं । तथा तिमीमा हामीभन्दा कुनै श्रेष्ठता रहेको

पनि हामी देख्दैनौं; होइन, अपितु हामी त तिमीहरु मिथ्यावादी हौ भन्ने विश्वास गर्छौं

قَالَ يٰقَوْمِ اَرَءَيْتُمْ اِنْ كُنْتُ عَلٰى بَيِّنَةٍ مِّنْ رَّبِّيْ وَاٰتٰىنِيْ رَحْمَةً مِّنْ عِنْدِهٖ فَعُمِّيَتْ عَلَيْكُمْ ؕ اَنُلْزِمُكُمُوْهَا وَاَنْتُمْ لَهَا كٰرِهُوْنَ ۞

२९. उनले भने, "हे मेरा मानिसहरू हो, मलाई भन: यदि म मेरा अल्लाहका तर्फबाट -आएको) प्रत्यक्ष प्रमाणको आधारमा कायम रहेको भएमा तथा उनले आफ्नो जुनाफबाट मप्रति गरेको ठूलो अनुग्रह तिमीहरूप्रति अव्यक्त गरिएको भएमा, तिमीहरूले त्यसलाई नरुचाएको खण्डमा पनि, के हामीले तिमीहरूमाथि त्यसलाई बलपूर्वक लादौंला त?

وَيٰقَوْمِ لَاۤ اَسْـَٔلُكُمْ عَلَيْهِ مَالًا ؕ اِنْ اَجْرِيَ اِلَّا عَلَى اللّٰهِ وَمَاۤ اَنَا بِطَارِدِ الَّذِيْنَ اٰمَنُوْا ؕ اِنَّهُمْ مُّلٰقُوْا رَبِّهِمْ وَلٰكِنِّيْۤ اَرٰىكُمْ قَوْمًا تَجْهَلُوْنَ ۞

३०. "तथा हे मेरा मानिसहरू हो, म त्यसको सट्टा तिमीहरूबाट कुनै धन मागिदन । मेरो प्रतिदान केवल अल्लाहकै जिम्मा रहेको छ । तथा विश्वासीजनलाई म कदापि लखेट्ने छैन । तिनीहरूले नि:स्सन्देह आफ्ना अल्लाहको साक्षात्कार प्राप्त गर्नेछन् । परन्तु म तिमीहरूलाई अज्ञानतापूर्वक कार्य गर्ने व्यक्तिहरू ठान्दछु ।

وَيٰقَوْمِ مَنْ يَّنْصُرُنِيْ مِنَ اللّٰهِ اِنْ طَرَدْتُّهُمْ ؕ اَفَلَا تَذَكَّرُوْنَ ۞

३१. "तथा हे मेरा मानिसहरू हो यदि मैले तिनीहरूलाई धपाउने कार्य गरेमा, अल्लाहविरुद्ध कसले मेरो सहयोग गर्ला त? अत: के तिमीहरू पुनर्विचार गर्दैनौ त?

وَلَاۤ اَقُوْلُ لَكُمْ عِنْدِيْ خَزَآئِنُ اللّٰهِ وَلَاۤ اَعْلَمُ الْغَيْبَ وَلَاۤ اَقُوْلُ اِنِّيْ مَلَكٌ وَّلَاۤ اَقُوْلُ لِلَّذِيْنَ تَزْدَرِيْۤ اَعْيُنُكُمْ لَنْ يُّؤْتِيَهُمُ اللّٰهُ خَيْرًا ؕ اَللّٰهُ اَعْلَمُ بِمَا فِيْۤ اَنْفُسِهِمْ ۚۖ اِنِّيْۤ اِذًا لَّمِنَ الظّٰلِمِيْنَ ۞

३२. तथा "अल्लाहका खजानाहरु मसित छन्," भनी म तिमीहरूलाई भन्दिन, न त म अदृश्य कुराहरू जान्दछु, न "म एउटा देवदूत हुँ ।" भनी म भन्छु, न त म तिमीहरूका दृष्टिमा तुच्छ रहेका व्यक्तिहरूका सम्बन्धमा "अल्लाहले कदापि तिनीहरूमाथि कुनै उपकार गर्नेछैनन्" भनी भन्छु– तिनीहरूका मनमा के छ भन्ने कुरा अल्लाहले नै राम्ररी जान्दछन्- (मैले यस्ता कुरा गरेमा) अवश्य म अत्याचारी

व्यक्तिहरूअन्तर्गत हुनेछु ।"

३३. तिनीहरूले भने, "हे नूह तिमीले निश्चय नै हामीसित (लामो) विवाद गरेका छौ तथा धेरैपटक तिमी हामीसित विवाद गर्दै आएका छौ; अतः अब यदि तिमी सत्यवादीहरूमध्ये रहेका छौ भने त्यो (वस्तु) हामीसमक्ष प्रस्तुत गर जुन (वस्तु)द्वारा तिमी हामीलाई धम्क्याउने गर्छौ ।"

قَالُوْا يٰنُوْحُ قَدْ جٰدَلْتَنَا فَاَكْثَرْتَ جِدَالَنَا فَاْتِنَا بِمَا تَعِدُنَآ اِنْ كُنْتَ مِنَ الصّٰدِقِيْنَ ﴿٣٣﴾

३४. उनले भने, "केवल अल्लाहले नै त्यसलाई तिमीहरूसमक्ष प्रस्तुत गर्नेछन्, यदि उनले चाहेमा तथा तिमीहरूले (अल्लाहको उद्देश्यलाई) व्यर्थ तुल्याउन सक्ने छैनौ ।

قَالَ اِنَّمَا يَاْتِيْكُمْ بِهِ اللّٰهُ اِنْ شَآءَ وَمَآ اَنْـتُمْ بِمُعْجِزِيْنَ ﴿٣٤﴾

३५. "यदि अल्लाहले तिमीहरूलाई विनष्ट गर्ने निश्चय गरेमा मैले तिमीहरूलाई जति अर्ती दिन चाहे तापनि मेरो अर्तीले तिमीहरूलाई कुनै लाभ पुऱ्याउने छैन । उनी नै तिमीहरूका अल्लाह हुन् तथा उनीतर्फ नै तिमीहरूलाई फर्काइनेछ ।"

وَلَا يَنْفَعُكُمْ نُصْحِيْٓ اِنْ اَرَدْتُّ اَنْ اَنْصَحَ لَكُمْ اِنْ كَانَ اللّٰهُ يُرِيْدُ اَنْ يُّغْوِيَكُمْ ؕ هُوَ رَبُّكُمْ ۟ وَ اِلَيْهِ تُرْجَعُوْنَ ﴿٣٥﴾

३६. के तिनीहरू "उसले त्यो गढेको हो" भनी भन्छन् त? तिमी भन, "यदि मैले नै त्यो गढेको हो भने, मेरो पाप ममाथि नै पर्नेछ तथा तिमीहरूले गरेका पापहरूबाट भने म मुक्त रहेको छु ।"

اَمْ يَقُوْلُوْنَ افْتَرٰىهُ ؕ قُلْ اِنِ افْتَرَيْتُهٗ فَعَلَيَّ اِجْرَامِيْ وَاَنَا بَرِيْٓءٌ مِّمَّا تُجْرِمُوْنَ ﴿٣٦﴾

३७. तथा नूहप्रति आकाशवाणी गरिएको थियो, "जुन व्यक्तिहरूले पहिला नै विश्वास स्थापना गरिसकेका छन् तिनीहरूबाहेक तिम्रा जातिका अन्य कुनै व्यक्तिहरूले पनि विश्वास गर्नेछैनन्; त्यसकारण तिनीहरू जे गरिरहेछन् त्यसप्रति दुखित नहोऊ ।

وَاُوْحِيَ اِلٰى نُوْحٍ اَنَّهٗ لَنْ يُّؤْمِنَ مِنْ قَوْمِكَ اِلَّا مَنْ قَدْ اٰمَنَ فَلَا تَبْتَئِسْ بِمَا كَانُوْا يَفْعَلُوْنَ ﴿٣٧﴾

३८. "तथा हाम्रो दृष्टिअन्तर्गत रही तथा हाम्रो आकाशवाणीमा (दिइएको

وَاصْنَعِ الْفُلْكَ بِاَعْيُنِنَا وَوَحْيِنَا وَلَا تُخَاطِبْنِيْ فِى الَّذِيْنَ ظَلَمُوْا ۚ اِنَّهُمْ مُّغْرَقُوْنَ ﴿٣٨﴾

अदेशानुसार) तिमी एउटा डुंगाको (नौकाको) निर्माण गर । तथा अत्याचारीहरूका सम्बन्धमा मलाई सम्बोधन नगर । तिनीहरूलाई अवश्य डुबाइनेछ ।

وَيَصْنَعُ الْفُلْكَ ۫ وَكُلَّمَا مَرَّ عَلَيْهِ مَلَأٌ مِّنْ قَوْمِهِ سَخِرُوْا مِنْهُ ۚ قَالَ إِنْ تَسْخَرُوْا مِنَّا فَإِنَّا نَسْخَرُ مِنْكُمْ كَمَا تَسْخَرُوْنَ ﴿٣٨﴾

३९. तथा उनी नौकाको निर्माण गर्दै थिए; तथा जब जब उनका जातिका मुखियाहरू उनका निकटबाट ओहोर-दोहोर गर्थे, तिनीहरू उनीप्रति ठट्टा गर्ने गर्थे । उनले भने, "यदि तिमीहरू (आज) हामीप्रति ठट्टा गरिरहेछौ भने, (त्यो समय आउँदैछ जब) हामी तिमीहरूप्रति त्यसरी नै ठट्टा गर्नेछौं जसरी तिमीहरू (आज) ठट्टा गरिरहेछौ ।"

فَسَوْفَ تَعْلَمُوْنَ ۙ مَنْ يَّأْتِيْهِ عَذَابٌ يُّخْزِيْهِ وَيَحِلُّ عَلَيْهِ عَذَابٌ مُّقِيْمٌ ﴿٣٩﴾

४०. "तब तिमीहरूलाई त्यो व्यक्ति को हो जसमाथि यस्तो दण्ड बर्सिनेछ जसले त्यसलाई अपमानित तुल्याउनेछ तथा कुन व्यक्तिमाथि लामो समयसम्म टिक्ने दण्ड बर्सिनेछ भन्ने कुरा थाहा हुनेछ ।

حَتّٰى إِذَا جَاءَ أَمْرُنَا وَفَارَ التَّنُّوْرُ ۙ قُلْنَا احْمِلْ فِيْهَا مِنْ كُلٍّ زَوْجَيْنِ اثْنَيْنِ وَأَهْلَكَ إِلَّا مَنْ سَبَقَ عَلَيْهِ الْقَوْلُ وَمَنْ اٰمَنَ ۚ وَمَا اٰمَنَ مَعَهٗ إِلَّا قَلِيْلٌ ﴿٤٠﴾

४१. अत: जब हाम्रो अदेश आयो तथा (पृथ्वीका) मुहानहरू फुटे, तब हामीले भन्यौं- "हरेक प्रकारका, पुरुष र स्त्री (जाति ) का जोडा र ती व्यक्तिहरूबाहेक जसका बारेमा पहिला नै वचन जारी भइसकेको छ, आफ्ना परिवारका सदस्यहरू तथा विश्वासीजनहरूलाई त्यसमा सवार गर ।" तथा केही व्यक्तिहरूबाहेक अन्य कसैले विश्वास गरेनन् (न त तिनीसित बसोबास गरे) ।

وَقَالَ ارْكَبُوْا فِيْهَا بِسْمِ اللّٰهِ مَجْرٖىهَا وَمُرْسٰىهَا ۚ إِنَّ رَبِّيْ لَغَفُوْرٌ رَّحِيْمٌ ﴿٤١﴾

४२. तथा उनले भने, "त्यसमा सवार होऊ । त्यसको चल्ने र लङ्गरमा स्थिर रहने काम अल्लाहको नाममा हुनेछ । मेरा अल्लाह निश्चय नै परम क्षमाशील, परम दानशील छन् ।"

وَهِيَ تَجْرِيْ بِهِمْ فِيْ مَوْجٍ كَالْجِبَالِ ۗ وَنَادٰى نُوْحُ ۨ ابْنَهٗ وَكَانَ فِيْ مَعْزِلٍ يّٰبُنَيَّ ارْكَبْ مَّعَنَا وَلَا تَكُنْ مَّعَ الْكٰفِرِيْنَ ۝٤٢

४३. तथा त्यो तिनीहरूलाई लिएर पहाडजस्ता लहरहरूमाथि चल्यो । तथा नूहले आफूसित छुट्टिँदै गरेका आफ्ना पुत्रलाई बोलाएर भने, "हे मेरा पुत्र, हामीसित सवार हौ तथा अविश्वासी व्यक्तिहरूसित सामेल नहोउ ।"

قَالَ سَاٰوِيْۤ اِلٰى جَبَلٍ يَّعْصِمُنِيْ مِنَ الْمَآءِ ۭ قَالَ لَا عَاصِمَ الْيَوْمَ مِنْ اَمْرِ اللّٰهِ اِلَّا مَنْ رَّحِمَ ۚ وَحَالَ بَيْنَهُمَا الْمَوْجُ فَكَانَ مِنَ الْمُغْرَقِيْنَ ۝٤٣

४४. उसले भन्यो, "म शीघ्र नै एउटा यस्तो पहाडको आश्रयमा पुग्नेछु जसले मलाई पानीबाट बचाउनेछ ।" उनले भने, "आज अल्लाहको निर्णयबाट उनको कृपा रहेका व्यक्तिहरूबाहेक अन्य कसैका निम्ति आश्रयस्थल छैन । तथा ती दुबैका बीच लहर उठ्यो; अतः त्यो डुब्ने व्यक्तिहरूमध्ये सामेल हुनपुग्यो ।

وَقِيْلَ يٰۤاَرْضُ ابْلَعِيْ مَآءَكِ وَيٰسَمَآءُ اَقْلِعِيْ وَغِيْضَ الْمَآءُ وَقُضِيَ الْاَمْرُ وَاسْتَوَتْ عَلَى الْجُوْدِيِّ وَقِيْلَ بُعْدًا لِّلْقَوْمِ الظّٰلِمِيْنَ ۝٤٤

४५. तथा के आदेश भयो भने, "ए धर्ती, तिमी आफ्नो पानीलाई निल, तथा ए आकाश, बर्सन छाडिदेउ ।" तथा पानीको सतह घटाइयो र मामिला समाप्त गरियो ( तथा त्यो -डुंगा अल-जूदिमा) रोकिन पुग्यो । तथा के भनियो भने, "अत्याचारी व्यक्तिहरूमाथि श्राप परोस् ।

وَنَادٰى نُوْحٌ رَّبَّهٗ فَقَالَ رَبِّ اِنَّ ابْنِيْ مِنْ اَهْلِيْ وَاِنَّ وَعْدَكَ الْحَقُّ وَاَنْتَ اَحْكَمُ الْحٰكِمِيْنَ ۝٤٥

४६. तथा नूहःले आफ्ना अल्लाहलाई पुकारे तथा भनेः "हे मेरा अल्लाह, मेरो पुत्र निस्सन्देह मेरा परिवारअन्तर्गत रहेको छ, तथा निश्चय नै, तिम्रो वचन नितान्त सत्य रहेको छ, तथा तिमी नै सबै निर्णायकहरूभन्दा श्रेष्ठ निर्णायक हौ ।"

قَالَ يٰنُوْحُ اِنَّهٗ لَيْسَ مِنْ اَهْلِكَ ۚ اِنَّهٗ عَمَلٌ غَيْرُ صَالِحٍ ۖ فَلَا تَسْـَٔلْنِ مَا لَيْسَ لَكَ بِهٖ عِلْمٌ ۭ اِنِّيْۤ اَعِظُكَ اَنْ تَكُوْنَ مِنَ الْجٰهِلِيْنَ ۝٤٦

४७. उनले भने, "हे नूहः, त्यो निश्चयरूपमा तिम्रा परिवारमध्येको होइन; निस्सन्देह त्यो अपकर्म गर्ने (मानिस) हो । अतः तिमी मसित आफूलाई ज्ञान नभएको कुराबारे प्रार्थना नगर । अज्ञान व्यक्तिसरह नबन भनी म तिमीलाई अर्ती दिन्छु ।"

४८. उनले भने: "हे मेरा अल्लाह, जुन कुराको मलाई ज्ञान छैन त्यसबारे तिमीसित प्रश्न गर्नबाट बच्नका निम्ति म तिम्रै शरण चाहन्छु तथा तिमीले मलाई क्षमादान नगरेमा र ममाथि कृपा नगरेमा, म घाटाग्रस्त व्यक्तिहरूमा सामेल हुन पुग्नेछु ।"

قَالَ رَبِّ إِنِّيٓ أَعُوذُ بِكَ أَنۡ أَسۡـَٔلَكَ مَا لَيۡسَ لِي بِهِۦ عِلۡمٞۖ وَإِلَّا تَغۡفِرۡ لِي وَتَرۡحَمۡنِيٓ أَكُن مِّنَ ٱلۡخَٰسِرِينَ ٤٨

४९. आदेश भयो, "हे नूह:, हाम्रा तर्फबाट प्राप्त शान्ति तथा तिमीप्रति र तिमीसित रहेका व्यक्तिहरूप्रति हुने अनुग्रहकासाथ ओर्ल । तथा केही यस्ता (अन्य) व्यक्तिहरू हुनेछन् जसलाई हामी (केही समयका निम्ति) जीविका प्रदान गर्नेछौं, त्यसपछि तिनीहरूलाई हाम्रो पीडादायक दण्डले छुनेछ ।"

قِيلَ يَٰنُوحُ ٱهۡبِطۡ بِسَلَٰمٖ مِّنَّا وَبَرَكَٰتٍ عَلَيۡكَ وَعَلَىٰٓ أُمَمٖ مِّمَّن مَّعَكَۚ وَأُمَمٞ سَنُمَتِّعُهُمۡ ثُمَّ يَمَسُّهُم مِّنَّا عَذَابٌ أَلِيمٞ ٤٩

५०. यी अदृश्य सन्देशहरू हुन् जुन तिमीप्रति हामी आकावाणी गर्छौं । यसअघि न तिमीले यिनीहरूलाई जान्दथ्यौ, न तिमीले न त तिम्रा मानिसहरूले नै । त्यसकारण तिमी धैर्यधारी बन; किनभने परिणाम भने धर्मपरायण व्यक्तिहरूकै हुन्छ।

تِلۡكَ مِنۡ أَنۢبَآءِ ٱلۡغَيۡبِ نُوحِيهَآ إِلَيۡكَۖ مَا كُنتَ تَعۡلَمُهَآ أَنتَ وَلَا قَوۡمُكَ مِن قَبۡلِ هَٰذَاۖ فَٱصۡبِرۡۖ إِنَّ ٱلۡعَٰقِبَةَ لِلۡمُتَّقِينَ ٥٠

५१. तथा (हामीले) आद्तर्फ तिनीहरूका भाई हूद्लाई (पठायौं) । उनले भने, "हे मेरा मानिसहरू हो, तिमीहरू (केवल) अल्लाहको उपासना गर । उनीबाहेक तिमीहरूको अन्य केही उपास्य छैन । तिमीहरू केवल मिथ्या गढ्ने गर्छौ ।

وَإِلَىٰ عَادٍ أَخَاهُمۡ هُودٗاۚ قَالَ يَٰقَوۡمِ ٱعۡبُدُواْ ٱللَّهَ مَا لَكُم مِّنۡ إِلَٰهٍ غَيۡرُهُۥٓۖ إِنۡ أَنتُمۡ إِلَّا مُفۡتَرُونَ ٥١

५२. "हे मेरा मानिसहरू हो, त्यस कार्यका निम्ति म तिमीहरूसित कुनै पारितोषिक माग्दिन । मेरो पारितोषिक त केवल तिनैको जिम्मा रहेको छ जसले मलाई सृष्टि गरे । अत: के तिमीहरू बुझ्दैनौ त?

يَٰقَوۡمِ لَآ أَسۡـَٔلُكُمۡ عَلَيۡهِ أَجۡرًاۖ إِنۡ أَجۡرِيَ إِلَّا عَلَى ٱلَّذِي فَطَرَنِيٓۚ أَفَلَا تَعۡقِلُونَ ٥٢

وَيٰقَوْمِ اسْتَغْفِرُوْا رَبَّكُمْ ثُمَّ تُوْبُوْٓا اِلَيْهِ يُرْسِلِ السَّمَآءَ عَلَيْكُمْ مِّدْرَارًا وَّيَزِدْكُمْ قُوَّةً اِلٰى قُوَّتِكُمْ وَلَا تَتَوَلَّوْا مُجْرِمِيْنَ ﴿٥٣﴾

५३. "तथा हे मेरा मानिसहरू हो, आफ्ना अल्लाहसित क्षमायाचना गर, र उनीतर्फ नै ध्यान केन्द्रित गर, उनले तिमीहरूमाथि प्रचुर रूपमा बर्सिने बादल पठाउनेछन्, तथा तिमीहरूको शक्तिमाथि शक्ति थपिदिनेछन् । तथा अपराधी बनी विमुख नहोऊ ।"

قَالُوْا يٰهُوْدُ مَا جِئْتَنَا بِبَيِّنَةٍ وَّمَا نَحْنُ بِتَارِكِيْٓ اٰلِهَتِنَا عَنْ قَوْلِكَ وَمَا نَحْنُ لَكَ بِمُؤْمِنِيْنَ ﴿٥٤﴾

५४. तिनीहरूले भने, "ऐ हूद्, तिमीले हामीसमक्ष कुनै स्पष्ट प्रमाण प्रस्तुत गरेनौ, तथा (केवल) तिम्रो भनाइमा लागेर हामी आफ्ना उपास्यहरूलाई छाड्ने छैनौं, न त हामी तिमीप्रति विश्वास नै गर्नेछौं ।

اِنْ نَّقُوْلُ اِلَّا اعْتَرٰىكَ بَعْضُ اٰلِهَتِنَا بِسُوْٓءٍ ۗ قَالَ اِنِّيْٓ اُشْهِدُ اللّٰهَ وَاشْهَدُوْٓا اَنِّيْ بَرِيْٓءٌ مِّمَّا تُشْرِكُوْنَ ﴿٥٥﴾

५५. "हामी केवल के भन्छौं भने, हाम्रा केही देवताहरू अनिष्ट साधनका निम्ति तिम्रापछि लागेका छन् ।" उनले भने, "म अवश्य अल्लाहलाई साक्षी ठहराउँछु तथा तिमीहरु पनि साक्षी बस जसलाई तिमीहरूले (अल्लाहका) भागीदार तुल्याउने गर्छौ तिनीहरुबाट म मुक्त रहेको छु ।

مِنْ دُوْنِهٖ فَكِيْدُوْنِيْ جَمِيْعًا ثُمَّ لَا تُنْظِرُوْنِ ﴿٥٦﴾

५६. "उनीबाहेक । अत: (तिमीहरू) सबै मिली मेराविरुद्ध योजना बनाऊ, र मलाई कुनै अवसर नदेऊ ।

اِنِّيْ تَوَكَّلْتُ عَلَى اللّٰهِ رَبِّيْ وَرَبِّكُمْ ۗ مَا مِنْ دَآبَّةٍ اِلَّا هُوَ اٰخِذٌۢ بِنَاصِيَتِهَا ۗ اِنَّ رَبِّيْ عَلٰى صِرَاطٍ مُّسْتَقِيْمٍ ﴿٥٧﴾

५७. मैले त मेरा अल्लाह तथा तिमीहरूका अल्लाह अल्लाहप्रति नै भरोसा राखेको छु । (पृथ्वीमा) हिड्डुल गर्ने कुनै प्राणी छैन जसका निधारका जुल्फहरुलाई उनले समातेको नहोस् । निस्सन्देह मेरा अल्लाह सन्मार्गमा (उभिएका) छन् ।

فَاِنْ تَوَلَّوْا فَقَدْ اَبْلَغْتُكُمْ مَّآ اُرْسِلْتُ بِهٖٓ اِلَيْكُمْ ۗ وَيَسْتَخْلِفُ رَبِّيْ قَوْمًا غَيْرَكُمْ ۚ وَلَا تَضُرُّوْنَهٗ شَيْـًٔا ۗ اِنَّ رَبِّيْ عَلٰى كُلِّ شَيْءٍ حَفِيْظٌ ﴿٥٨﴾

५८. "अत: यदि तिमीहरू विमुख भयौ भने, जुन कुराका साथ मलाई तिमीहरू समक्ष पठाइएको थियो त्यो कुरा मैले पिहिला नै तमीहरूसम्म पुऱ्याइसकेको छु, तथा मेरा अल्लाहले अन्य (जातिका) मानिसहरूलाई तिमीहरूका

उत्तराधिकारी बनाउनेछन् । तथा तिमीहरूले उनको केही बिगार्न सक्नेछैनौ । निश्चय नै मेरा अल्लाह सम्पूर्ण वस्तुहरूका संरक्षक रहेका छन् ।"

وَلَمَّا جَآءَ اَمْرُنَا نَجَّيْنَا هُوْدًا وَّالَّذِيْنَ اٰمَنُوْا مَعَهٗ بِرَحْمَةٍ مِّنَّا ۚ وَنَجَّيْنٰهُمْ مِّنْ عَذَابٍ غَلِيْظٍ ﴿٥٩﴾

५९. तथा जब हाम्रो निर्देश आयो, हामीले आफ्नो (विशेष) कृपाद्वारा हूद् तथा उनी सँगसँगै विश्वास स्थापना गर्ने व्यक्तिहरूको रक्षा गऱ्यौं । तथा हामीले तिनीहरूलाई एउटा कठोर दण्डबाट बचायौं ।

وَتِلْكَ عَادٌ ۟ جَحَدُوْا بِاٰيٰتِ رَبِّهِمْ وَعَصَوْا رُسُلَهٗ وَاتَّبَعُوْٓا اَمْرَ كُلِّ جَبَّارٍ عَنِيْدٍ ﴿٦٠﴾

६०. तथा यिनीहरू नै आद् (जाति) थिए । तिनीहरूले आफ्ना अल्लाहका चिह्नहरूलाई अस्वीकार गरेका थिए, तथा उनका सन्देशवाहकहरूको अवज्ञा गरेका थिए र तिनीहरूले प्रत्येक अभिमानी (सत्यको) शत्रु व्यक्तिको अदेशको अनुसरण गरेका थिए ।

وَاُتْبِعُوْا فِيْ هٰذِهِ الدُّنْيَا لَعْنَةً وَّيَوْمَ الْقِيٰمَةِ ۗ اَلَآ اِنَّ عَادًا كَفَرُوْا رَبَّهُمْ ۗ اَلَا بُعْدًا لِّعَادٍ قَوْمِ هُوْدٍ ﴿٦١﴾

६१. यस संसारमा तिनीहरूका पछि एउटा अभिशाप लगाइएको थियो, तथा पुनरुत्थानका दिन पनि (सो) लगाइनेछ । हेर !आद् (जातिका मानिसहरू)ले आफ्ना अल्लाहसित अकृतज्ञतापूर्ण व्यवहार गरेका थिए । हेर ! हूद्का जातिका आदहरूप्रति अभिशाप परेको छ !

وَاِلٰى ثَمُوْدَ اَخَاهُمْ صٰلِحًا ۘ قَالَ يٰقَوْمِ اعْبُدُوا اللّٰهَ مَا لَكُمْ مِّنْ اِلٰهٍ غَيْرُهٗ ۗ هُوَ اَنْشَاَكُمْ مِّنَ الْاَرْضِ وَاسْتَعْمَرَكُمْ فِيْهَا فَاسْتَغْفِرُوْهُ ثُمَّ تُوْبُوْٓا اِلَيْهِ ۗ اِنَّ رَبِّيْ قَرِيْبٌ مُّجِيْبٌ ﴿٦٢﴾

६२. तथा समूद्का (कबिला) तर्फ (हामीले) तिनीहरूका भाई सालिह्लाई (पठायौं) । उनले भने, "हे मेरा मानिसहरू हो, "तिमीहरू अल्लाहको उपासना गर; उनीबाहेक तिमीहरूको अन्य केही उपास्य छैन । उनैले तिमीहरूलाई धर्तीबाट खडा गरे, तथा त्यसैमा तिमीहरूलाई बसोवास प्रदान गरे । अतः उनीसित क्षमायाचना गर, तथा (पूर्ण हृदयले) उनीतर्फ ध्यान केन्द्रित गर । वस्तुतः मेरा अल्लाह अति निकट छन् (तथा प्रार्थनाको) उत्तर दिने गर्छन् ।

قَالُوا يَا صَالِحُ قَدْ كُنتَ فِينَا مَرْجُوًّا قَبْلَ هَٰذَا أَتَنْهَانَا أَن نَّعْبُدَ مَا يَعْبُدُ آبَاؤُنَا وَإِنَّنَا لَفِي شَكٍّ مِّمَّا تَدْعُونَا إِلَيْهِ مُرِيبٍ ﴿٦٣﴾

६३. तिनीहरूले भने, "ऐ सालिह, हामीहरूबीच तिमी एक यस्ता व्यक्ति थियौ जसमाथि हामीले आशा राखेका थियौं । के तिमी हामीलाई तिनीहरूको उपासना गर्नबाट रोक्छौ जसको उपासना हाम्रा पितृहरू गर्ने गर्थे? तथा जुन कुरातर्फ तिमी हामीलाई बोलाउँछौ त्यसबारे हामी साँचै नै -अस्थिर तुल्याउने) शंकाले ग्रस्त छौं ।"

قَالَ يَا قَوْمِ أَرَأَيْتُمْ إِن كُنتُ عَلَىٰ بَيِّنَةٍ مِّن رَّبِّي وَآتَانِي مِنْهُ رَحْمَةً فَمَن يَنصُرُنِي مِنَ اللَّهِ إِنْ عَصَيْتُهُ فَمَا تَزِيدُونَنِي غَيْرَ تَخْسِيرٍ ﴿٦٤﴾

६४. उनले भने, "हे मेरा मानिसहरू हो, मलाई भन त, यदि म आफ्ना अल्लाहका तर्फबाट आएको स्पष्ट सत्यको आधारमा यहाँ उभिएको भएमा, र उनले आफ्ना जुनाफबाट मलाई करुणा प्रदान गरेका भएमा यदि मैले उनको अवज्ञा गरेमा अल्लाहविरुद्ध कसले मेरो सहयोग गर्ला त? अत: त्यस अवस्थामा त तिमीहरूले केवल मेरो विनष्टतामा नै बृद्धि ल्याउनेछौ ।

وَيَا قَوْمِ هَٰذِهِ نَاقَةُ اللَّهِ لَكُمْ آيَةً فَذَرُوهَا تَأْكُلْ فِي أَرْضِ اللَّهِ وَلَا تَمَسُّوهَا بِسُوءٍ فَيَأْخُذَكُمْ عَذَابٌ قَرِيبٌ ﴿٦٥﴾

६५. "तथा हे मेरा मानिसहरू हो, यो अल्लाहको पोथी उँट तिमीहरूका निम्ति एउटा चिह्नस्वरूप रहेको छ, अत: त्यसलाई अल्लाहको धर्तीमा चर्नका निम्ति स्वतन्त्र छाडिदेऊ, तथा त्यसलाई कुनै प्रकारको कष्ट दिने अभिप्रायले नछोऊ अन्यथा एउटा शीघ्र आउने दण्डले तिमीहरूलाई गाँज्नेछ ।"

فَعَقَرُوهَا فَقَالَ تَمَتَّعُوا فِي دَارِكُمْ ثَلَاثَةَ أَيَّامٍ ذَٰلِكَ وَعْدٌ غَيْرُ مَكْذُوبٍ ﴿٦٦﴾

६६. परन्तु तिनीहरूले त्यसका खुट्टाका नसाहरु काटिदिए; तब उनले भने, "तिमीहरू तीनदिनसम्म आफ्ना घरमा मोजमस्तीमा बस । यो व्यर्थ नजाने वचन रहेको छ ।"

فَلَمَّا جَاءَ أَمْرُنَا نَجَّيْنَا صَالِحًا وَالَّذِينَ آمَنُوا مَعَهُ بِرَحْمَةٍ مِّنَّا وَمِنْ خِزْيِ يَوْمِئِذٍ إِنَّ رَبَّكَ هُوَ الْقَوِيُّ الْعَزِيزُ ﴿٦٧﴾

६७. अत: जब हाम्रो आदेश आयो, हामीले आफ्नो -विशेष) कृपाद्वारा सालिह तथा उनीसित विश्वास स्थापना गर्ने व्यक्तिहरूलाई बचायौं, तथा (हामीले

तिनीहरूलाई) त्यसदिनको कलङ्कबाट (बचायौं) । निश्चय नै, तिम्रा अल्लाह सर्वशक्तिमान, सर्वविजयी रहेका छन् ।

وَاَخَذَ الَّذِيْنَ ظَلَمُوا الصَّيْحَةُ فَاَصْبَحُوْا فِيْ دِيَارِهِمْ جٰثِمِيْنَ ۝٦٨

६८. तथा जसले अत्याचार गरेका थिए तिनीहरूलाई एउटा गर्जनपूर्ण तीव्र आँधीले समात्यो, तथा बिहानी हुनासाथ तिनीहरू आ-आफ्ना घरमा घोप्टिन पुगे,

كَاَنْ لَّمْ يَغْنَوْا فِيْهَا ۗ اَلَآ اِنَّ ثَمُوْدَا۟ كَفَرُوْا رَبَّهُمْ ۗ اَلَا بُعْدًا لِّثَمُوْدَ ۝٦٩

६९. मानौं तिनीहरू त्यहाँ कहिल्यै बसेका थिएनन् । सुन ! समूदले आफ्ना अल्लाहसित अकृतज्ञतापूर्ण व्यवहार गरेका थिए, सावधान ! समूद (का कविला) प्रति अभिशाप रहेको छ ।

وَلَقَدْ جَآءَتْ رُسُلُنَآ اِبْرٰهِيْمَ بِالْبُشْرٰى قَالُوْا سَلٰمًا ۗ قَالَ سَلٰمٌ فَمَا لَبِثَ اَنْ جَآءَ بِعِجْلٍ حَنِيْذٍ ۝٧٠

७०. तथा इब्राहिमसमक्ष निश्चय नै हाम्रा दूतहरू सुभसन्देशहरुका साथ आएका थिए । तिनीहरूले भनेका थिए, हामी तिम्रो शान्तिको कामना गर्छौं ।" उनले उत्तर दिए, तिमीहरूप्रति पनि शान्ति वर्षण होस्," तथा उनले शीघ्र नै एउटा भुटेको बाछो प्रस्तुत गरे ।

فَلَمَّا رَآٰ اَيْدِيَهُمْ لَا تَصِلُ اِلَيْهِ نَكِرَهُمْ وَاَوْجَسَ مِنْهُمْ خِيْفَةً ۗ قَالُوْا لَا تَخَفْ اِنَّآ اُرْسِلْنَآ اِلٰى قَوْمِ لُوْطٍ ۝٧١

७१. परन्तु जब उनले तिनीहरूका हात त्यहाँ नपुगेको देखे तब तिनीहरूलाई अपरिचित ठाने तथा तिनीहरूको डर (मनमा) अनुभव गरे । तिनीहरूले भने, "तिमी नडराउ, हामीलाई त लूत्का मानिसहरूतर्फ पठाइएको हो ।"

وَامْرَاَتُهٗ قَآئِمَةٌ فَضَحِكَتْ فَبَشَّرْنٰهَا بِاِسْحٰقَ ۙ وَمِنْ وَّرَآءِ اِسْحٰقَ يَعْقُوْبَ ۝٧٢

७२. तथा उनकी पत्नी (नजिकै) उभिरहेकी थिइन, उनी मुसुमुसु हाँसिन, त्यतिकैमा हामीले उनलाई इस्हाक तथा इस्हाकपछि याकुब (जेकोब) को जन्म हुने शुभसन्देशहरु दियौं ।

قَالَتْ يٰوَيْلَتٰٓى ءَاَلِدُ وَاَنَا عَجُوْزٌ وَّهٰذَا بَعْلِيْ شَيْخًا ۗ اِنَّ هٰذَا لَشَيْءٌ عَجِيْبٌ ۝٧٣

७३. तिनले भनिन्, "ओहो, मेरो दुर्भाग्य ! के मैले सन्तान जन्माउन सकुँली र?

वस्तुतः म बुढी रहेकी छु? साथै, यी मेरा स्वामी -पनि) ता बुढा छन् । यो निस्सन्देह एउटा आश्चर्यचकित कुरो हो ।"

قَالُوْٓا اَتَعْجَبِيْنَ مِنْ اَمْرِ اللّٰهِ رَحْمَتُ اللّٰهِ وَ بَرَكٰتُهٗ عَلَيْكُمْ اَهْلَ الْبَيْتِ ؕ اِنَّهٗ حَمِيْدٌ مَّجِيْدٌ ﴿۷۳﴾

७४. तिनीहरूले भने, के तिमी अल्लाहको निर्णयप्रति आश्चर्यचकित हुन्छ्यौ त? हे यस घरका निवासी हो, अल्लाहको करुणा र उनको कृपा तिमीहरूमाथि रहेको छ । निश्चय नै, उनी प्रशंसनीय, गौरबशाली रहेका छन् ।

فَلَمَّا ذَهَبَ عَنْ اِبْرٰهِيْمَ الرَّوْعُ وَ جَآءَتْهُ الْبُشْرٰى يُجَادِلُنَا فِيْ قَوْمِ لُوْطٍ ﴿۷۴﴾

७५. तथा जब इब्राहिमको डर हट्यो, र उनलाई शुभसन्देश प्राप्त भयो, (तब) उनी हामीसित लूत्का जातिका (मानिसहरूका) बारेमा विवाद गर्न लागे ।

اِنَّ اِبْرٰهِيْمَ لَحَلِيْمٌ اَوَّاهٌ مُّنِيْبٌ ﴿۷۵﴾

७६. निस्सन्देह इब्राहिम धैर्यधारी, नम्रहृदयी तथा बारम्बार (अल्लाहतर्फ) झुक्ने प्रवृत्तिका व्यक्ति थिए ।

يٰٓاِبْرٰهِيْمُ اَعْرِضْ عَنْ هٰذَا ۚ اِنَّهٗ قَدْ جَآءَ اَمْرُ رَبِّكَ ۚ وَ اِنَّهُمْ اٰتِيْهِمْ عَذَابٌ غَيْرُ مَرْدُوْدٍ ﴿۷۶﴾

७७. "हे इब्राहिम, यस कुरालाई छाडिदेउ । तिम्रा अल्लाहको आदेश निस्सन्देह आइसकेको छ, तथा निस्सन्देह तिनीहरू माथि टार्न नसकिने दण्ड बर्सिंदैछ ।"

وَ لَمَّا جَآءَتْ رُسُلُنَا لُوْطًا سِيْٓءَ بِهِمْ وَ ضَاقَ بِهِمْ ذَرْعًا وَّ قَالَ هٰذَا يَوْمٌ عَصِيْبٌ ﴿۷۷﴾

७८. तथा जब हाम्रा दूतहरू लूत्समक्ष आए, (तब) तिनीहरूका बारेमा उनी अति चिन्तित भए र तिनीहरूका खातिर (स्वयम्लाई) असहाय ठानेर भने, "आजको दिन अति कठिन छ ।"

وَ جَآءَهٗ قَوْمُهٗ يُهْرَعُوْنَ اِلَيْهِ ؕ وَ مِنْ قَبْلُ كَانُوْا يَعْمَلُوْنَ السَّيِّاٰتِ ؕ قَالَ يٰقَوْمِ هٰٓؤُلَآءِ بَنَاتِيْ هُنَّ اَطْهَرُ لَكُمْ فَاتَّقُوا اللّٰهَ وَ لَا تُخْزُوْنِ فِيْ ضَيْفِيْ ؕ اَلَيْسَ مِنْكُمْ رَجُلٌ رَّشِيْدٌ ﴿۷۸﴾

७९. तथा उनका मानिसहरू (क्रोधले) थरथराउँदै उनीतर्फ दगुर्दै आए, तथा त्यसअघि (पनि) तिनीहरू अपकर्म गर्ने गर्थे । उनले भने, "हे मेरा मानिसहरू हो, यी मेरा छोरीहरू हुन्, यिनीहरू तिमीहरूका

निम्ति अति पवित्र रहेका छन्*। अतः अल्लाहसित डराऊ तथा मेरा अतिथीहरूको सम्बन्धमा मलाई अपमानित नगर । के तिमीहरूमध्ये कोही सद्विचारवान् व्यक्ति छैन र?

قَالُوا لَقَدْ عَلِمْتَ مَا لَنَا فِي بَنَاتِكَ مِنْ حَقٍّ وَإِنَّكَ لَتَعْلَمُ مَا نُرِيدُ ﴿٨٠﴾

८०. तिनीहरूले उत्तर दिए, "तिम्रा छोरीहरूमाथि हाम्रो कुनै अधिकार छैन भन्ने कुरा तिमीलाई पक्का पनि थाहा छ, तथा हाम्रो चाहना के रहेको छ भन्ने पनि तिमी राम्ररी जान्दछौ ।"

قَالَ لَوْ أَنَّ لِي بِكُمْ قُوَّةً أَوْ آوِي إِلَىٰ رُكْنٍ شَدِيدٍ ﴿٨١﴾

८१. उनले भने, (हाय) यदि तिमीहरूसित (सामना गर्ने) शक्ति मसा रहेको भए, अथवा अब मैले -आश्रयका निम्ति) एक शक्तिशाली सहाराको शरण लिनै पर्छ ।"

قَالُوا يَا لُوطُ إِنَّا رُسُلُ رَبِّكَ لَنْ يَصِلُوا إِلَيْكَ فَأَسْرِ بِأَهْلِكَ بِقِطْعٍ مِنَ اللَّيْلِ وَلَا يَلْتَفِتْ مِنْكُمْ أَحَدٌ إِلَّا امْرَأَتَكَ ۖ إِنَّهُ مُصِيبُهَا مَا أَصَابَهُمْ ۚ إِنَّ مَوْعِدَهُمُ الصُّبْحُ ۚ أَلَيْسَ الصُّبْحُ بِقَرِيبٍ ﴿٨٢﴾

८२. (दूतहरूले) भने, "हे लूत्, हामी तिम्रा अल्लाहका दूतहरू हौं । तिनीहरू तिम्रा कदापि निकट आउन सक्नेछैनन् । अतः तिमी आफ्ना परिवारका साथ रात्रीको कुनै प्रहरमा प्रस्थान गर, तथा तिम्री पत्नीबाहेक तिमीहरूमध्ये कसैले पछि फर्किएर नहेरोस् निश्चय नै, जुन (दण्ड) तिनीहरूमाथि बर्सन लागिरहेछ, त्यही तिनीमाथि (पनि) बर्सनेछ । निस्सन्देह, तिनीहरूको निर्धारित समय बिहानी रहेको छ । के बिहानी अति निकट

---

* जसलाई विपरीत लिङ्गको सौन्दर्यले आकर्षित गर्दैनथे त्यस्तो जातिलाई चुप गराउन यो अति उपयुक्त उत्तर थियो । वास्तवमै महिलाहरू तिनीहरूका निम्ति पवित्र (शुद्ध) थिए । यसैतर्फ 'अधिक पवित्र' शब्दले सङ्केत गर्छ । यद्यपि दुष्ट प्रकृतिका व्यक्तिहरूले यस उत्तरलाई विकृतरूपमा तोडमोड गरी के प्रकट गरे भने मानौं लूतले तिनीहरूलाई आफ्ना छोरीहरू पेस गरेका थिए ताकि तिनीहरूको भेट चढाएर आफ्ना अतिथिहरूको मान जोगाउन सकियोस् । मानौं उनले नै तिनीहरूलाई उनीहरू (छोरीहरू) को पवित्रता भ्रष्ट गर्न निमन्त्रणा दिएका थिए । यो उत्तर स्पष्टरूपमा तिनीहरूको विकृत प्रकृतिको प्रतिविम्ब थियो ।

छैन र* ?"

८३. अत: जब हाम्रो आदेश आयो, हामीले त्यस (नगर) को उपल्लो भागलाई तल्लो भागमा परिवर्तन गऱ्यौं । तथा त्यसमाथि तह तह हुने माटाका ढुंगा (डल्ला) को बर्सा बर्सायौं ।

فَلَمَّا جَآءَ اَمْرُنَا جَعَلْنَا عَالِيَهَا سَافِلَهَا وَاَمْطَرْنَا عَلَيْهَا حِجَارَةً مِّنْ سِجِّيْلٍ ۙ مَّنْضُوْدٍ ﴿۸۲﴾

८४. जिसमा तिम्रा अल्लाहका विधानअनुसार (तिनीहरूका निम्ति) चिह्न लगाइएका थिए । तथा त्यस्तो (दण्ड वर्तमान युगका) अत्याचारी व्यक्तिहरूबाट (पनि) टाढा रहेको छैन ।

مُّسَوَّمَةً عِنْدَ رَبِّكَ ؕ وَمَا هِيَ مِنَ الظّٰلِمِيْنَ بِبَعِيْدٍ ﴿۸۳﴾

८५. तथा मिद्यान (जाति) तर्फ (हामीले) तिनीहरूका भाइ शूऐबलाई (पठायौं) । उनले भने, "हे मेरा मानिसहरू हो, अल्लाहको उपासना गर । उनीबाहेक तिमीहरूको अन्य कोही उपास्य छैन । तथा कम नाप र कम तौल दिने नगर । तिमीहरूलाई म सुखसम्पन्न (अवस्थामा) देख्छु तथा म तिमीहरूका सम्बन्धमा एउटा विध्वंसक दिनको दण्डदेखि डराउँछु ।

وَاِلٰى مَدْيَنَ اَخَاهُمْ شُعَيْبًا ؕ قَالَ يٰقَوْمِ اعْبُدُوا اللّٰهَ مَا لَكُمْ مِّنْ اِلٰهٍ غَيْرُهٗ ؕ وَلَا تَنْقُصُوا الْمِكْيَالَ وَالْمِيْزَانَ اِنِّيْٓ اَرٰىكُمْ بِخَيْرٍ وَّاِنِّيْٓ اَخَافُ عَلَيْكُمْ عَذَابَ يَوْمٍ مُّحِيْطٍ ﴿۸۴﴾

८६. "तथा हे मेरा मानिसहरू हो, नाप र तौल न्यायका साथ पूरा पूरा दिने गर, तथा मानिसहरूलाई तिनीहरूका (प्राप्य) वस्तुहरूबाट बञ्चित नगर तथा उपद्रवी

وَيٰقَوْمِ اَوْفُوا الْمِكْيَالَ وَالْمِيْزَانَ بِالْقِسْطِ وَلَا تَبْخَسُوا النَّاسَ اَشْيَآءَهُمْ وَلَا تَعْثَوْا فِي الْاَرْضِ مُفْسِدِيْنَ ﴿۸۵﴾

---

* आगन्तुक सन्देशवाहकहरूको उक्त उपदेशले के सङ्केत दिन्छ भने लूत र उनका जातिका बीचमा जुन वार्ता भएको थियो त्यो निजीरूपमा भएको थियो त्यस समयसम्म तिनीहरू (शत्रुहरू)लाई उनीसम्म प्रत्यक्ष पहुँच प्राप्त भएको थिएन अथवा न त घरका कुनै सदस्यसम्म नै आफ्नो प्रयासमा असफल भएकै कारण तिनीहरूले त्यस घरमा आफ्नो सशक्त प्रवेशका निम्ति लूतसित पुनर्भेट गर्ने निश्चय गरेका हुनुपर्छ । उनकी (लूतकी) पत्नीबाहेक आफ्ना सम्पूर्ण परिवारका साथ रात्रीको अन्तिम भागमा घरबाट प्रस्थान गर भनी सन्देशवाहकहरूले (लूतलाई) दिएको परामर्शबाटै पछि त्यो (आक्रमण) परित्यग गरिएको थियो ।

बनी पृथ्वीमा अशान्ति फैलाउने नगर ।

بَقِيَّتُ اللّٰهِ خَيْرٌ لَّكُمْ اِنْ كُنْتُمْ مُّؤْمِنِيْنَ ۚ وَمَآ اَنَا عَلَيْكُمْ بِحَفِيْظٍ ﴿٨٦﴾

८७. "यदि तिमीहरू विश्वासी हौ भने, अल्लाहद्वारा (तिमीहरूकहाँ) छाडिएको वस्तु नै तिमीहरूका निम्ति उत्तम रहेको छ । तथा म तिमीहरूमाथि संरक्षकस्वरूप रहेको छैन ।"

قَالُوْا يٰشُعَيْبُ اَصَلٰوتُكَ تَاْمُرُكَ اَنْ نَّتْرُكَ مَا يَعْبُدُ اٰبَآؤُنَآ اَوْ اَنْ نَّفْعَلَ فِيْٓ اَمْوَالِنَا مَا نَشٰٓؤُا ۗ اِنَّكَ لَاَنْتَ الْحَلِيْمُ الرَّشِيْدُ ﴿٨٧﴾

८८. तिनीहरूले उत्तर दिए, "ऐ शूयेब, के तिम्रो नमाजले तिमीलाई जुन वस्तुहरूको उपासना हाम्रा पितृहरू गर्दै आएका छन् तिनलाई हामीले त्याग्नु पर्छ अथवा हामीले आफ्नो इच्छानुसार आफ्नो धन प्रयोग छाड्नु पर्छ भन्ने आदेश दिन्छ र? तिमी त (निस्सन्देह) एकजना अति बुद्धिमान (तथा) सद्विचारवान् (व्यक्ति) हौ ।

قَالَ يٰقَوْمِ اَرَءَيْتُمْ اِنْ كُنْتُ عَلٰى بَيِّنَةٍ مِّنْ رَّبِّيْ وَرَزَقَنِيْ مِنْهُ رِزْقًا حَسَنًا ۗ وَمَآ اُرِيْدُ اَنْ اُخَالِفَكُمْ اِلٰى مَآ اَنْهٰىكُمْ عَنْهُ ۗ اِنْ اُرِيْدُ اِلَّا الْاِصْلَاحَ مَا اسْتَطَعْتُ ۗ وَمَا تَوْفِيْقِيْٓ اِلَّا بِاللّٰهِ ۗ عَلَيْهِ تَوَكَّلْتُ وَاِلَيْهِ اُنِيْبُ ﴿٨٨﴾

८९. उनले भने, "हे मेरा मानिसहरू हो । मलाई भन त, यदि मैले आफ्ना अल्लाहका तर्फबाट (आएको) स्पष्ट तर्कको आधारलाई अडान लिएको भएमा, तथा उनले आफ्ना जुनाफबाट मलाई एउटा उत्तम जीविका प्रदान गरेका भएमा, (तिमीहरूले उनलाई के उत्तर दिनेछौ त)? तथा म तिमीहरू विपरित त्यो कार्य गर्न चाहन्न जुन कार्य नगर्ने अनुरोध म तिमीहरूलाई गर्ने गर्छु । म त केवल यथासम्भव सुधारकार्य गर्न चाहन्छु । अल्लाहको सहयोगबाहेक ममा कुनै क्षमता रहेको छैन । उनीमाथि नै म भरोसा राख्छु तथा उनीतर्फ नै म झुक्छु ।

وَيٰقَوْمِ لَا يَجْرِمَنَّكُمْ شِقَاقِيْٓ اَنْ يُّصِيْبَكُمْ مِّثْلُ مَآ اَصَابَ قَوْمَ نُوْحٍ اَوْ قَوْمَ هُوْدٍ اَوْ قَوْمَ صٰلِحٍ ۗ وَمَا قَوْمُ لُوْطٍ مِّنْكُمْ بِبَعِيْدٍ ﴿٨٩﴾

९०. "तथा हे मेरा मानिसहरू हो, म प्रतिको (तिमीहरूको) शत्रुताले तिमीहरूलाई (त्यसतर्फ) नलैजाओस् जसबाट तिमीहरूमाथि त्यस्तै (दण्ड) बर्सियोस् जस्तो नूहका जाति अथवा हूदका जाति वा सालिहका मानिसहरूमाथि बर्सिएको थियो, तथा लूत्का मानिसहरू पनि तिमीहरूबाट

धेरै टाढा रहेका छैनन् ।

९१. "तथा आफ्ना अल्लाहसित क्षमा याचना गर, त्यसपछि उनीतर्फ (सहृदय) फर्क । वस्तुतः मेरा अल्लाह परम करुणाशील, परम स्नेहशील रहेका छन् ।"

وَاسْتَغْفِرُوا رَبَّكُمْ ثُمَّ تُوبُوا إِلَيْهِ ۚ إِنَّ رَبِّي رَحِيمٌ وَدُودٌ ﴿٩٠﴾

९२. तिनीहरूले उत्तर दिए, "हे शूऐब, तिमीले भनेका अधिकतर कुराहरू हामी बुझ्दैनौ, तथा निश्चय नै, तिमीलाई हामीमध्येका दुर्बल व्यक्ति रहेको हामी ठान्छौं । तथा यदि तिम्रो समूह नरहेको भए, निश्चय नै हामी तिमीलाई ढुंगाले हान्ने थियौं । जहाँसम्म तिम्रो प्रश्न छ, हामीमाथि तिमीलाई कुनै शक्ति प्राप्त छैन ।"

قَالُوا يَا شُعَيْبُ مَا نَفْقَهُ كَثِيرًا مِّمَّا تَقُولُ وَإِنَّا لَنَرَاكَ فِينَا ضَعِيفًا ۖ وَلَوْلَا رَهْطُكَ لَرَجَمْنَاكَ ۖ وَمَا أَنتَ عَلَيْنَا بِعَزِيزٍ ﴿٩١﴾

९३. उनले भने, "हे मेरा मानिसहरू हो, के अल्लाहभन्दा मेरो समूह नै तिमीहरूका दृष्टिमा अधिक प्रबल रहेको छ त? तथा उपेक्षितस्वरूप उनलाई तिमीहरूले आफ्ना पिठ्यूँपछाडि फ्याँकेका छौ । निश्चय नै, तिमीहरूका सम्पूर्ण कार्यहरूलाई मेरा अल्लाहले घेरेर राख्छन् ।

قَالَ يَا قَوْمِ أَرَهْطِي أَعَزُّ عَلَيْكُم مِّنَ اللَّهِ وَاتَّخَذْتُمُوهُ وَرَاءَكُمْ ظِهْرِيًّا ۖ إِنَّ رَبِّي بِمَا تَعْمَلُونَ مُحِيطٌ ﴿٩٢﴾

९४. "तथा हे मेरा मानिसहरू हो, तिमीहरू आफूसक्दो कार्य गर, म (पनि) कार्यरत छु । शीघ्र नै तिमीहरूलाई कसमाथि त्यो दण्ड बर्सिनेछ जसले उसलाई अपमानित तुल्याउनेछ, तथा त्यो कुन व्यक्ति हो जो मिथ्यावादी रहेको छ भन्ने कुरा ज्ञात हुनेछ । तथा प्रतीक्षा गर, म (पनि) अवश्य तिमीहरूसित प्रतीक्षारत छु ।

وَيَا قَوْمِ اعْمَلُوا عَلَىٰ مَكَانَتِكُمْ إِنِّي عَامِلٌ ۖ سَوْفَ تَعْلَمُونَ مَن يَأْتِيهِ عَذَابٌ يُخْزِيهِ وَمَنْ هُوَ كَاذِبٌ ۖ وَارْتَقِبُوا إِنِّي مَعَكُمْ رَقِيبٌ ﴿٩٣﴾

९५. तथा जब हाम्रो आदेश आयो, हामीले आफ्नो (विशेष) कृपाद्वारा शूऐब र उनीसित विश्वास स्थापना गरेका व्यक्तिहरूलाई बचायौं, तथा जसले अत्याचार गरेका थिए

وَلَمَّا جَاءَ أَمْرُنَا نَجَّيْنَا شُعَيْبًا وَالَّذِينَ آمَنُوا مَعَهُ بِرَحْمَةٍ مِّنَّا وَأَخَذَتِ الَّذِينَ ظَلَمُوا الصَّيْحَةُ فَأَصْبَحُوا فِي دِيَارِهِمْ جَاثِمِينَ ﴿٩٤﴾

तिनीहरूलाई दण्डले समात्यो, फलतः तिनीहरू आफ्नै घरमा घोप्टिन पुगे ।

كَأَن لَّمْ يَغْنَوْا فِيهَا ۗ أَلَا بُعْدًا لِّمَدْيَنَ كَمَا بَعِدَتْ ثَمُودُ ﴿٩٥﴾

९६. मानौं तिनीहरू त्यहाँ कहिल्यै बसेका थिएनन् सुन, मिद्‌यानहरू (पनि) त्यसरी नै विनष्ट गरिए, जसरी समूदहरू विनष्ट गरिएका थिए ।

وَلَقَدْ أَرْسَلْنَا مُوسَىٰ بِآيَاتِنَا وَسُلْطَانٍ مُّبِينٍ ﴿٩٦﴾

९७. तथा, निश्चय नै मूसालाई हामीले आफ्ना चिह्नहरू तथा स्पष्ट प्रमाणहरूका साथ पठाएका थियौं ।

إِلَىٰ فِرْعَوْنَ وَمَلَئِهِ فَاتَّبَعُوا أَمْرَ فِرْعَوْنَ ۖ وَمَا أَمْرُ فِرْعَوْنَ بِرَشِيدٍ ﴿٩٧﴾

९८. फिरौन र उसका मुखियाहरूतर्फ, परन्तु तिनीहरूले फिरौनकै आदेश अनुसरण गरे, तथा फिरौनको आदेश पटक्कै न्यायोचित थिएन ।

يَقْدُمُ قَوْمَهُ يَوْمَ الْقِيَامَةِ فَأَوْرَدَهُمُ النَّارَ ۖ وَبِئْسَ الْوِرْدُ الْمَوْرُودُ ﴿٩٨﴾

९९. पुनरुत्थानका दिन त्यो आफ्ना मानिसहरूका अघि अघि हिँड्नेछ तथा तिनीहरूलाई अग्नि (को खाड्ल) माथि (त्यसरी नै) लिएर जानेछ (जसरी पशुहरूलाई पानीको घाटमा ओराल्ने गरिन्छ) । त्यो पानीको घाट अति निकृष्ट रहेको छ तथा ती व्यक्तिहरू पनि जसलाई त्यसतर्फ लगिन्छ ।

وَأُتْبِعُوا فِي هَٰذِهِ لَعْنَةً وَيَوْمَ الْقِيَامَةِ ۚ بِئْسَ الرِّفْدُ الْمَرْفُودُ ﴿٩٩﴾

१००. यस (जीवन) मा अभिशाप तिनीहरूका पछि लगाइएको छ तथा पुनरुत्थानका दिन (पनि) । त्यो उपहार निकृष्ट रहेको छ तथा जसलाई त्यस्तो उपहार दिइन्छ (तिनीहरू पनि) ।

ذَٰلِكَ مِنْ أَنبَاءِ الْقُرَىٰ نَقُصُّهُ عَلَيْكَ ۖ مِنْهَا قَائِمٌ وَحَصِيدٌ ﴿١٠٠﴾

१०१. यो (ध्वस्त भएका) नगरहरूको समाचारहरुमध्ये एउटा (विवरण) हो, जुन हामीले तिमीसमक्ष वर्णन गरेका छौं । तीमध्ये केही खडा रहेका छन् भने अन्य (केही) चाहिँ (पाकेको बाली सदृश) काटिइएका छन् ।

وَمَا ظَلَمْنٰهُمْ وَلٰكِنْ ظَلَمُوْٓا اَنْفُسَهُمْ فَمَآ اَغْنَتْ عَنْهُمْ اٰلِهَتُهُمُ الَّتِيْ يَدْعُوْنَ مِنْ دُوْنِ اللّٰهِ مِنْ شَيْءٍ لَّمَّا جَآءَ اَمْرُ رَبِّكَ ؕ وَمَا زَادُوْهُمْ غَيْرَ تَتْبِيْبٍ ﴿١٠٢﴾

१०२. तथा तिनीहरूमाथि हामीले अत्याचार गरेका थिएनौं, अपितु तिनीहरूले स्वयम् नै आफूमाथि अत्याचार गरेका थिए, तथा जब तिम्रा अल्लाहको आदेश (दण्ड) आयो (तब) अल्लाहलाई छाडी जसलाई तिनीहरू पुकार्ने गर्थे ती उपास्यहरूले तिनीहरूलाई कुनै लाभ पुऱ्याएनन्, तथा तिनीहरूले उनीहरूलाई उन्मुख गरेनन् परन्तु विनष्टतातर्फ नै ।

وَكَذٰلِكَ اَخْذُ رَبِّكَ اِذَآ اَخَذَ الْقُرٰى وَهِيَ ظَالِمَةٌ ؕ اِنَّ اَخْذَهٗٓ اَلِيْمٌ شَدِيْدٌ ﴿١٠٣﴾

१०३. तिम्रा प्रतिपालकको पकड यस्तै हुन्छ जब उनी अत्याचारमा व्यस्त नगर (वासी)हरूलाई पक्रिन्छन् । निश्चय नै, उनको पकड अति पीडादायक र कठोर रहेको छ ।

اِنَّ فِيْ ذٰلِكَ لَاٰيَةً لِّمَنْ خَافَ عَذَابَ الْاٰخِرَةِ ؕ ذٰلِكَ يَوْمٌ مَّجْمُوْعٌ ۙ لَّهُ النَّاسُ وَذٰلِكَ يَوْمٌ مَّشْهُوْدٌ ﴿١٠٤﴾

१०४. जुन व्यक्तिमा परलोकको दण्डको भय रहेको छ त्यसका निम्ति यसमा निस्सन्देह एउटा चिह्न छ । त्यो एउटा यस्तो दिन हो जसका निम्ति (सम्पूर्ण) मानवजातिलाई एकत्रित गरिनेछ तथा त्यो यस्तो दिन हो जसमा -भएको कार्यवाहीलाई सबैले) देख्नेछन् ।

وَمَا نُؤَخِّرُهٗٓ اِلَّا لِاَجَلٍ مَّعْدُوْدٍ ﴿١٠٥﴾

१०५. तथा त्यसलाई हामी न केवल एउटा निर्धारित समयसम्मका निम्ति ढिलाइ गरिरहेछौं ।

يَوْمَ يَاْتِ لَا تَكَلَّمُ نَفْسٌ اِلَّا بِاِذْنِهٖ ۚ فَمِنْهُمْ شَقِيٌّ وَّسَعِيْدٌ ﴿١٠٦﴾

१०६. जब त्यो दिन आउनेछ, कुनै आत्माले पनि उनको अनुमतिबिना बोल्न सक्नेछैन, तब तिनीहरूमध्ये केही) अभागी ठहरिनेछन् तथा (अन्य केही) भाग्यवान् ।

فَاَمَّا الَّذِيْنَ شَقُوْا فَفِي النَّارِ لَهُمْ فِيْهَا زَفِيْرٌ وَّشَهِيْقٌ ﴿١٠٧﴾

१०७. अत: जुन व्यक्तिहरू अभागी ठहरिने छन्, तिनीहरू अग्निमा दाखिल हुनेछन्, जहाँ तिनीहरू सुस्केरा हाल्नेछन् र क्रन्दन

गर्नेछन्,

خٰلِدِيْنَ فِيْهَا مَا دَامَتِ السَّمٰوٰتُ وَالْاَرْضُ اِلَّا مَا شَآءَ رَبُّكَ ؕ اِنَّ رَبَّكَ فَعَّالٌ لِّمَا يُرِيْدُ ﴿١٠٨﴾

१०८. जबसम्म आकाशमण्डल र पृथ्वी कायम रहने छन् तबसम्म तिनीहरू त्यहाँ बसोबास गर्नेछन् । सिवाय तिम्रा प्रतिपालकको जे इच्छा हुन्छ, निश्चय नै, तिम्रा प्रतिपालकले जे इच्छा गर्छन् त्यो (कार्य) गरेरै छाड्छन् ।

وَاَمَّا الَّذِيْنَ سُعِدُوْا فَفِى الْجَنَّةِ خٰلِدِيْنَ فِيْهَا مَا دَامَتِ السَّمٰوٰتُ وَالْاَرْضُ اِلَّا مَا شَآءَ رَبُّكَ ؕ عَطَآءً غَيْرَ مَجْذُوْذٍ ﴿١٠٩﴾

१०९. परन्तु जुन व्यक्तिहरू भाग्यशाली सिद्ध हुनेछन्, तिनीहरू भने स्वर्गमा हुनेछन्, तिनीहरू त्यहाँ तबसम्म बसोबास गर्नेछन् जबसम्म आकाशमण्डल र पृथ्वी कायम रहनेछन्, सिवाय तिम्रा अल्लाहको इच्छा रहेमा– एउटा यस्तो उपहार हो– जुन कदापि विच्छिन्न हुनेछैन–

فَلَا تَكُ فِيْ مِرْيَةٍ مِّمَّا يَعْبُدُ هٰۤؤُلَآءِ ؕ مَا يَعْبُدُوْنَ اِلَّا كَمَا يَعْبُدُ اٰبَآؤُهُمْ مِّنْ قَبْلُ ؕ وَاِنَّا لَمُوَفُّوْهُمْ نَصِيْبَهُمْ غَيْرَ مَنْقُوْصٍ ﴿١١٠﴾

११०. अतः जसको तिनीहरू उपासना गर्छन् त्यसका सम्बन्धमा तिमी आशंकित नहोऊ । तिनीहरु त्यसरी नै उपासना गर्छन् जसरी पहिला तिनीहरूका पितृहरू उपासना गर्थे तथा हामी तिनीहरूलाई अवश्य नै तिनीहरूको भाग नघटाइकन पूरा पूरा प्रदान गर्नेछौं ।

وَلَقَدْ اٰتَيْنَا مُوْسَى الْكِتٰبَ فَاخْتُلِفَ فِيْهِ ؕ وَلَوْلَا كَلِمَةٌ سَبَقَتْ مِنْ رَّبِّكَ لَقُضِيَ بَيْنَهُمْ ؕ وَاِنَّهُمْ لَفِيْ شَكٍّ مِّنْهُ مُرِيْبٍ ﴿١١١﴾

१११. तथा हामीले मूसालाई निस्सन्देह पुस्तक प्रदान गरेका थियौं, परन्तु त्यसमा मतभेदहरु सिर्जना गरियो, तथा यदि तिम्रा प्रतिपालकका तर्फबाट पहिला नै एउटा वचन भइनसकेको भए त, अवश्य (कहिल्यै) तिनीहरूका बीच त्यस मामिलाको निर्णय भइसक्ने थियो, तथा (अब) ती (व्यक्तिहरू) त्यस सम्बन्धमा अस्थिरता सिर्जना गर्ने सन्देहमा डुबेका छन् ।

وَاِنَّ كُلًّا لَّمَّا لَيُوَفِّيَنَّهُمْ رَبُّكَ اَعْمَالَهُمْ ؕ اِنَّهٗ بِمَا يَعْمَلُوْنَ خَبِيْرٌ ﴿١١٢﴾

११२. तथा निश्चय नै, (तिनीहरूले गरेका) सबै (कार्यको) अहिलेसम्म पूर्ण प्रतिदान दिइएको छैन (परन्तु) तिम्रा अल्लाहले निश्चय नै तिनीहरूका कार्य अनुसार

तिनीहरूलाई पूर्ण प्रतिदान प्रदान गर्नेछन् । उनी अवश्य तिनीहरूका सम्पूर्ण कार्यहरूप्रति पूर्णरूपले विदित रहेका छन् ।

فَاسْتَقِمْ كَمَآ أُمِرْتَ وَمَنْ تَابَ مَعَكَ وَلَا تَطْغَوْا ۚ إِنَّهُ بِمَا تَعْمَلُونَ بَصِيرٌ ﴿١١٢﴾

११३. अत: तिमी तिमीलाई भएको आदेशानुसार सन्मार्गमा दृढ रहने गर, र ती व्यक्तिहरू (पनि) जसले तिमीसित (मिलेरअल्लाहतर्फ) ध्यान केन्द्रित गरेका छन् । तथा तिमीहरू सीमोल्लङ्घन नगर, हे विश्वासीजन हो) निस्सन्देह जुन कार्य तिमीहरू गर्छौ उनले त्यसलाई देखिरहेछन् ।

وَلَا تَرْكَنُوٓا إِلَى الَّذِينَ ظَلَمُوا فَتَمَسَّكُمُ النَّارُ ۙ وَمَا لَكُمْ مِنْ دُونِ اللَّهِ مِنْ أَوْلِيَآءَ ثُمَّ لَا تُنْصَرُونَ ﴿١١٣﴾

११४. तथा जसले अत्याचार गर्छन् तिमीहरू तिनीहरूतर्फ नझुक, अन्यथा तिमीहरूलाई अग्निले छुनेछ । तथा अल्लाहबाहेक तिमीहरूलाई अन्य कुनै मित्र प्राप्त हुनेछैन, न त तिमीहरूलाई सहयोग नै मिल्नेछ ।

وَأَقِمِ الصَّلٰوةَ طَرَفَيِ النَّهَارِ وَزُلَفًا مِنَ الَّيْلِ ۚ إِنَّ الْحَسَنٰتِ يُذْهِبْنَ السَّيِّاٰتِ ۚ ذٰلِكَ ذِكْرٰى لِلذّٰكِرِينَ ﴿١١٤﴾

११५. तथा दिनका दुबै छेउमा तथा दिनका निकट रहेका रात्रिका भागहरूमा नमाज अनुष्ठान गर्ने गर । निस्सन्देह सद्‌गुणहरूले अवगुणहरूलाई हटाउँछन् । स्मरणकारी हरूका निम्ति यो एउटा ठूलो उपदेश रहेको छ ।

وَاصْبِرْ فَإِنَّ اللَّهَ لَا يُضِيعُ أَجْرَ الْمُحْسِنِينَ ﴿١١٥﴾

११६. तथा तिमी धैर्यधारण गर, किनभने अल्लाहले धर्मनिष्ठ व्यक्तिहरूको प्रतिदानलाई कदापि नष्ट हुन दिँदैनन् ।

فَلَوْلَا كَانَ مِنَ الْقُرُونِ مِنْ قَبْلِكُمْ أُولُوا بَقِيَّةٍ يَنْهَوْنَ عَنِ الْفَسَادِ فِي الْأَرْضِ إِلَّا قَلِيلًا مِمَّنْ أَنْجَيْنَا مِنْهُمْ ۚ وَاتَّبَعَ الَّذِينَ ظَلَمُوا مَآ أُتْرِفُوا فِيهِ وَكَانُوا مُجْرِمِينَ ﴿١١٦﴾

११७. अत: किन तिमीहरूभन्दा पहिलाका पुस्ताहरूमा यस्ता बुद्धिमान व्यक्तिहरू निस्किएनन् जसले पृथ्वीमा भ्रष्टाचार निवारण गर्न सकून्– सिवाय तिनीहरूमध्ये केही व्यक्तिहरू जसलाई तिनीहरूमध्ये

हामीले बचाएका थियौं? परन्तु अत्याचारीहरू ती कुराहरूका पछि लागे जुन कुराहरूमा तिनीहरूलाई सम्पन्नता र सुविधा प्रदान गरिएको थियो, तथा तिनीहरू दोषी हुन पुगे ।

وَمَا كَانَ رَبُّكَ لِيُهْلِكَ الْقُرَىٰ بِظُلْمٍ وَأَهْلُهَا مُصْلِحُونَ ﴿١١٨﴾

११८. तथा तिम्रा अल्लाहले नगरहरूलाई त्यहाँका निवासीहरू सुधारक हुँदाहुँदै अन्यायपूर्वक कदापि विनष्ट गर्दैनन् ।

وَلَوْ شَاءَ رَبُّكَ لَجَعَلَ النَّاسَ أُمَّةً وَاحِدَةً وَلَا يَزَالُونَ مُخْتَلِفِينَ ﴿١١٩﴾

११९. तथा यदि तिम्रा अल्लाहले आफ्नो इच्छालाई (शक्ति प्रयोग गरेर) लागू गरेका भए, उनले मानवजातिलाई अवश्य एउटै जाति बनाउने थिए, परन्तु तिनीहरूले मतभेद त्याग्नेछैनन्,

إِلَّا مَن رَّحِمَ رَبُّكَ ۚ وَلِذَٰلِكَ خَلَقَهُمْ ۗ وَتَمَّتْ كَلِمَةُ رَبِّكَ لَأَمْلَأَنَّ جَهَنَّمَ مِنَ الْجِنَّةِ وَالنَّاسِ أَجْمَعِينَ ﴿١٢٠﴾

१२०. सिवाय ती व्यक्तिहरू जसमाथि तिम्रा अल्लाहले करुणा गरेका छन्, तथा त्यसैका निम्ति उनले तिनीहरूलाई सृष्टि गरेका हुन् । परन्तु तिम्रा अल्लाहको वचन अवश्य पूर्ण हुनेछ अर्थात्, "म -अवज्ञाकारी) जिन्न र मानिसहरू सबैद्वारा नर्कलाई अवश्य भर्नेछु"

وَكُلًّا نَّقُصُّ عَلَيْكَ مِنْ أَنبَاءِ الرُّسُلِ مَا نُثَبِّتُ بِهِ فُؤَادَكَ ۚ وَجَاءَكَ فِي هَٰذِهِ الْحَقُّ وَمَوْعِظَةٌ وَذِكْرَىٰ لِلْمُؤْمِنِينَ ﴿١٢١﴾

१२१. तथा तिम्रो हृदयलाई दृढ तुल्याउनका निम्ति सन्देशवाहकहरूका सबै घटनाहरु तिमीसमक्ष वर्णन गर्छौं । तथा यसमा तिमीसमक्ष सत्य तथा उपदेश र विश्वासीजनका निम्ति सम्झौटोको आगमन भएको छ ।

وَقُل لِّلَّذِينَ لَا يُؤْمِنُونَ اعْمَلُوا عَلَىٰ مَكَانَتِكُمْ إِنَّا عَامِلُونَ ﴿١٢٢﴾

१२२. तथा जसले विश्वास गर्दैनन् तिनीहरूलाई के भन भने, "तिमीहरू आफूसक्दो कार्य गर, हामी (पनि) कार्यरत छौं ।

وَانتَظِرُوا إِنَّا مُنتَظِرُونَ ﴿١٢٣﴾

१२३. तथा तिमीहरू प्रतीक्षा गर, हामी (पनि) प्रतीक्षारत छौं ।"

وَلِلّٰهِ غَيْبُ السَّمٰوٰتِ وَالْاَرْضِ وَاِلَيْهِ يُرْجَعُ الْاَمْرُ كُلُّهٗ فَاعْبُدْهُ وَتَوَكَّلْ عَلَيْهِ ۚ وَمَا رَبُّكَ بِغَافِلٍ عَمَّا تَعْمَلُوْنَ ﴿١٢٣﴾

१२४. तथा आकाशमण्डल र पृथ्वीका सम्पूर्ण अदृश्य कुराहरूका स्वामी अल्लाह नै हुन्, तथा सम्पूर्ण मामिला उनीसमक्ष पेश हुनेछन् । त्यसकारण उनकै उपासना गर तथा (केवल) उनीमाथि नै आफ्नो भरोसा राख । तथा तिमीहरूका कार्यहरूप्रति तिम्रा अल्लाह अविदित रहेका छैनन् ।

سُوْرَةُ يُوْسُفَ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ مِائَةٌ وَّاثْنَتَا عَشْرَةَ اٰيَةً وَّاثْنَا عَشَرَ رُكُوْعًا

## यूसुफ
(हिजरत अघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

الٓرٰ تِلْكَ اٰيٰتُ الْكِتٰبِ الْمُبِيْنِ ②

२. अलिफ् लाम रा* । यी सुस्पष्ट पुस्तकका आयातहरू हुन् ।

اِنَّآ اَنْزَلْنٰهُ قُرْءٰنًا عَرَبِيًّا لَّعَلَّكُمْ تَعْقِلُوْنَ ③

३. हामीले यसलाई अवतीर्ण गरेका हौं ।
–कुरान (बारम्बार पाठ गरिने पुस्तकस्वरूप)
–अरबीमा (स्पष्ट वर्णन गर्ने भाषामा)
–ताकि तिमीहरूले बुझ्न सक ।

نَحْنُ نَقُصُّ عَلَيْكَ اَحْسَنَ الْقَصَصِ بِمَآ اَوْحَيْنَآ اِلَيْكَ هٰذَا الْقُرْاٰنَ ۖ وَاِنْ كُنْتَ مِنْ قَبْلِهٖ لَمِنَ الْغٰفِلِيْنَ ④

४. तिमीप्रति यो कुरान आकाशवाणी गरी हामी तिमीसमक्ष उत्तम विवरण वर्णन गर्छौं, यद्यपि यसअघि तिमी अनभिज्ञ नरहेका व्यक्तिहरूमध्ये (एक) थियौ ।

اِذْ قَالَ يُوْسُفُ لِاَبِيْهِ يٰٓاَبَتِ اِنِّيْ رَاَيْتُ اَحَدَ عَشَرَ كَوْكَبًا وَّالشَّمْسَ وَالْقَمَرَ رَاَيْتُهُمْ لِيْ سٰجِدِيْنَ ⑤

५. (त्यस समयको स्मरण गर) जब यूसुफ (जोसेफ)ले आफ्ना पितालाई भनेका थिए, “हे मेरा पिता, मैले सपनामा एघारवटा ताराहरू र सूर्य र चन्द्रमालाई देखें, मैले तिनीहरूलाई मेरा सामु साष्टाङ्ग दण्डवत गर्दै गरेको देखें ।”

قَالَ يٰبُنَيَّ لَا تَقْصُصْ رُءْيَاكَ عَلٰٓى اِخْوَتِكَ فَيَكِيْدُوْا لَكَ كَيْدًا ۭ اِنَّ الشَّيْطٰنَ لِلْاِنْسَانِ عَدُوٌّ مُّبِيْنٌ ⑥

६. उनले भने, “हे मेरा प्यारा पुत्र, आफ्नो सपना आफ्ना भाइहरूसमक्ष वर्णन नगरेस्, अन्यथा तिमीविरुद्ध तिनीहरूले कुनै षडयन्त्र रच्नेछन्, किनभने सैतान मानिसको खुल्लमखुल्ला शत्रु हो ।

وَكَذٰلِكَ يَجْتَبِيْكَ رَبُّكَ وَيُعَلِّمُكَ مِنْ

७. “तथा त्यसैगरी (तिमीले देखेअनुसार

* म सर्वद्रष्टा अल्लाह हुँ ।

تَأْوِيْلِ الْاَحَادِيْثِ وَيُتِمُّ نِعْمَتَهٗ عَلَيْكَ وَعَلٰٓى اٰلِ يَعْقُوْبَ كَمَآ اَتَمَّهَا عَلٰٓى اَبَوَيْكَ مِنْ قَبْلُ اِبْرٰهِيْمَ وَاِسْحٰقَ ۭ اِنَّ رَبَّكَ عَلِيْمٌ حَكِيْمٌ ۝

नै हुनेछ), तिम्रा अल्लाहले तिमीलाई चुन्नेछन् तथा वर्णन गरिएका कुराहरूको तत्त्वज्ञान तिमीलाई प्रदान गर्नेछन् तथा तिमीमाथि र याकुब -जेकुब) का परिवारमाथि आफ्नो अनुग्रह पूर्ण गर्नेछन् । जसरी उनले तिम्रा दुई पितृहरू– इब्राहिम र इसहाक्माथि पूर्ण गरेका थिए । वस्तुत: तिम्रा अल्लाह सर्वज्ञ, तत्त्वज्ञ छन् ।"

لَقَدْ كَانَ فِيْ يُوْسُفَ وَاِخْوَتِهٖٓ اٰيٰتٌ لِّلسَّاۗىِٕلِيْنَ ۝

८. निश्चय नै, यूसुफ -जोसेफ) तथा उनका भाइहरूमा सोधपूछ गर्नेहरूका निम्ति चिह्नहरू रहेका छन् ।

اِذْ قَالُوْا لَيُوْسُفُ وَاَخُوْهُ اَحَبُّ اِلٰٓى اَبِيْنَا مِنَّا وَنَحْنُ عُصْبَةٌ ۭ اِنَّ اَبَانَا لَفِيْ ضَلٰلٍ مُّبِيْنِ ۝

९. जब तिनीहरूले भने, "यूसुफ र उनको भाइ निश्चय नै, हाम्रा पितालाई हामीभन्दा अधिक प्रिय रहेका छन्, वस्तुत: हाम्रो समूह भने शक्तिशाली रहेको छ ।" निस्सन्देह, हाम्रा पिता एउटा स्पष्ट भ्रान्तिमा परेका छन् ।

اقْتُلُوْا يُوْسُفَ اَوِ اطْرَحُوْهُ اَرْضًا يَّخْلُ لَكُمْ وَجْهُ اَبِيْكُمْ وَتَكُوْنُوْا مِنْۢ بَعْدِهٖ قَوْمًا صٰلِحِيْنَ ۝

१०. "यूसुफको हत्या गर अथवा उसलाई कुनै (सुदूर) देशमा फ्याँकेर आऊ, ताकि तिमीहरूका पिताको अनुग्रह पूर्णरूपले तिमीहरूलाई प्राप्त होस्, तथा त्यसपछि तिमीहरू सत्यनिष्ठ जाति बन्न सक्नेछौ ।"

قَالَ قَاۗىِٕلٌ مِّنْهُمْ لَا تَقْتُلُوْا يُوْسُفَ وَاَلْقُوْهُ فِيْ غَيٰبَتِ الْجُبِّ يَلْتَقِطْهُ بَعْضُ السَّيَّارَةِ اِنْ كُنْتُمْ فٰعِلِيْنَ ۝

११. तिनीहरूमध्ये एउटाले भन्यो, "यूसुफको हत्या नगर, परन्तु यदि तिमीहरूले केही गर्ने नै हो भने, त्यसलाई कुनै गहिरो इनारभित्र फ्याँकिदेऊ, यात्रीहरूमध्ये कसैले त्यसलाई उठाएर लैजानेछ ।"

قَالُوْا يٰٓاَبَانَا مَا لَكَ لَا تَاْمَنَّا عَلٰي يُوْسُفَ وَاِنَّا لَهٗ لَنٰصِحُوْنَ ۝

१२. तिनीहरूले भने, "हे हाम्रा पिता, यूसुफका सम्बन्धमा तिमी हामीमाथि किन विश्वास राख्दैनौ, जब हामी भने उसका निस्सन्देह साँचा शुभचिन्तक रहेका छौं?

اَرْسِلْهُ مَعَنَا غَدًا يَّرْتَعْ وَ يَلْعَبْ وَاِنَّا لَهٗ لَحٰفِظُوْنَ ﴿١٢﴾

१३. "उसलाई भोलि हामीसित पठाउ ताकि उसले आनन्द उठाओस् र खेलोस्, तथा हामी अवश्य उसको सुरक्षा गर्नेछौं ।"

قَالَ اِنِّيْ لَيَحْزُنُنِيْٓ اَنْ تَذْهَبُوْا بِهٖ وَاَخَافُ اَنْ يَّاْكُلَهُ الذِّئْبُ وَ اَنْتُمْ عَنْهُ غٰفِلُوْنَ ﴿١٣﴾

१४. उनले भने, "तिमीहरूले त्यसलाई बाहिर लिएर जाने कुराले मलाई चिन्तित तुल्याउँछ, तथा तिमीहरू त्यसबाट बेखबर रहेका अवस्थामा उसलाई ब्वाँसोले ता कतै नखाइदेला भनी म डराउँछु ।"

قَالُوْا لَئِنْ اَكَلَهُ الذِّئْبُ وَ نَحْنُ عُصْبَةٌ اِنَّآ اِذًا لَّخٰسِرُوْنَ ﴿١٤﴾

१५. तिनीहरूले भने, "निश्चय नै, हामी जस्तो शक्तिशाली जमात रहँदा रहँदै पनि यदि उसलाई ब्वाँसोले खायो भने त हामी निस्सन्देह (ठूलो) हानि उठाउने व्यक्तिहरू बन्नेछौं ।"

فَلَمَّا ذَهَبُوْا بِهٖ وَاَجْمَعُوْٓا اَنْ يَّجْعَلُوْهُ فِيْ غَيٰبَتِ الْجُبِّ ۚ وَاَوْحَيْنَآ اِلَيْهِ لَتُنَبِّئَنَّهُمْ بِاَمْرِهِمْ هٰذَا وَهُمْ لَا يَشْعُرُوْنَ ﴿١٥﴾

१६. अतः जब तिनीहरूले उसलाई लिएर गए, तथा उसलाई एउटा गहिरो इनारमा धकेल्ने कुरामा सबै सहमत भए, तथा हामीले के भन्दै उनीमाथि आकाशवाणी गऱ्यौं भने, "तिमीले अवश्य (एक दिन) तिनीहरूको यस कार्यकलापका बारेमा तिनीहरूलाई अवगत गराउनेछौ, यद्यपि तिनीहरू भने (तिम्रो सनाखतप्रति) अनभिज्ञ रहनेछन् ।"

وَجَآءُوْٓ اَبَاهُمْ عِشَآءً يَّبْكُوْنَ ﴿١٦﴾

१७. तथा सन्ध्या समयमा तिनीहरू रुँदै आफ्ना पितासमक्ष आए ।

قَالُوْا يٰٓاَبَانَآ اِنَّا ذَهَبْنَا نَسْتَبِقُ وَتَرَكْنَا يُوْسُفَ عِنْدَ مَتَاعِنَا فَاَكَلَهُ الذِّئْبُ ۚ وَمَآ اَنْتَ بِمُؤْمِنٍ لَّنَا وَلَوْ كُنَّا صٰدِقِيْنَ ﴿١٧﴾

१८. तिनीहरूले भने, "हे हाम्रा पिता, हामी त परस्पर दौडदै थियौं, र यूसुफलाई हामीले आफ्ना मालसमान भएका ठाउँमा छाडेका थियौं, तथा ब्वाँसोले उसलाई खायो, परन्तु तिमीले हामीमाथि विश्वास गर्नेछैनौ यदि हामीले सत्य बोले तापनि ।"

وَجَآءُوْ عَلٰى قَمِيْصِهٖ بِدَمٍ كَذِبٍ ۚ قَالَ بَلْ سَوَّلَتْ لَكُمْ اَنْفُسُكُمْ اَمْرًا ۚ فَصَبْرٌ

१९. तथा तिनीहरूले उनको कमिजमा नकली रगत लगाएर ल्याए । उनले भने,

جَمِيلٌ ۚ وَاللَّهُ الْمُسْتَعَانُ عَلَىٰ مَا تَصِفُونَ ﴿١٨﴾

"होइन, परन्तु तिमीहरूको मनले यो (पापपूर्ण) कार्यलाई तिमीहरू(को दृष्टि)मा आकर्षणीय तुल्याएर देखाएको छ ।अतः (अब) उत्तम(रूपमा) धैर्यधारण गर्नु नै (मेरा निम्ति उचित हुनेछ) । तथा तिमीहरूको दृढयोक्तिविरुद्ध (केवल) अल्लाहसित सहयोग याचना गर्न सकिनेछ ।"

وَجَاءَتْ سَيَّارَةٌ فَأَرْسَلُوا وَارِدَهُمْ فَأَدْلَىٰ دَلْوَهُ ۖ قَالَ يَا بُشْرَىٰ هَٰذَا غُلَامٌ ۚ وَأَسَرُّوهُ بِضَاعَةً ۚ وَاللَّهُ عَلِيمٌ بِمَا يَعْمَلُونَ ﴿٢٠﴾

२०. तथा त्यहाँ एउटा यात्रीदल आइपुग्यो र तिनीहरूले आफ्नो पानी भर्ने मानिसलाई पठाए । तथा उसले आफ्नो बाल्टी (इनारभित्र) खसाल्यो । तब उसले भन्यो, "ओहो, कति उत्तम कुरो ! यहाँ त एउटा युवक पो रहेछ ।" तथा तिनीहरूले उसलाई एउटा बिक्रीयोग्य मालसरह लुकाएर लगे, तथा तिनीहरूले गरेको क्रियाकलापबारे अल्लाहलाई पूर्ण जानकारी थियो ।

وَشَرَوْهُ بِثَمَنٍ بَخْسٍ دَرَاهِمَ مَعْدُودَةٍ ۚ وَكَانُوا فِيهِ مِنَ الزَّاهِدِينَ ﴿٢١﴾

२१. तथा तिनीहरूले उसलाई सस्तो दाममा अर्थात् केही दिर्हम मै बिक्री गरे, तथा त्यसबाट कुनै लाभ उठाउने तिनीहरूलाई चासो पनि थिएन ।

وَقَالَ الَّذِي اشْتَرَاهُ مِن مِّصْرَ لِامْرَأَتِهِ أَكْرِمِي مَثْوَاهُ عَسَىٰ أَن يَنفَعَنَا أَوْ نَتَّخِذَهُ وَلَدًا ۚ وَكَذَٰلِكَ مَكَّنَّا لِيُوسُفَ فِي الْأَرْضِ وَلِنُعَلِّمَهُ مِن تَأْوِيلِ الْأَحَادِيثِ ۚ وَاللَّهُ غَالِبٌ عَلَىٰ أَمْرِهِ وَلَٰكِنَّ أَكْثَرَ النَّاسِ لَا يَعْلَمُونَ ﴿٢٢﴾

२२. तथा मिश्र (इजिप्ट) निवासी जुन व्यक्तिले उसलाई किनेको थियो उसले आफ्नी पत्नी- लाई भन्यो, "यसलाई सम्मानपूर्वक राख । सम्भवतः यो हाम्रा निम्ति लाभदायक बन्नेछ, अथवा यसलाई हामी पुत्रको रुपमा ग्रहण गरौंला ।" तथा यसप्रकार हामीले यूसुफलाई त्यस देशमा प्रतिष्ठापित तुल्याएका थियौं, तथा (हामीले त्यसै गरेका थियौं) ताकि उनलाई हामी वर्णन गरिएका कुराहरूको तत्त्व ज्ञान सिकाउन सकौं । तथा आफ्नो विधि- विधानमाथि अल्लाहलाई पूर्ण अधिकार प्राप्त छ, परन्तु धेरैजसो व्यक्तिहरू (यो

कुरा) जान्दैनन् ।

२३. तथा जब उनी आफ्नो परिपक्वताको उमेरमा पुगे, तब हामीले उनलाई निर्णय शक्ति र ज्ञान प्रदान गऱ्यौं । तथा यसै प्रकार सत्कर्मीहरूलाई हामी प्रतिदान दिने गर्छौं ।

وَلَمَّا بَلَغَ اَشُدَّهٗۤ اٰتَيْنٰهُ حُكْمًا وَّعِلْمًا ؕ وَكَذٰلِكَ نَجْزِى الْمُحْسِنِيْنَ ﴿٢٢﴾

२४. तथा जसका घरमा उनी थिए त्यही (महिला) ले उनको इच्छा विपरित उनलाई बहकाउन चाही, तथा त्यसले ढोकाहरू बन्द गरी र भनी, "अब आउ ।" उनले भने, "म अल्लाहको शरण चाहन्छु । उनी नै मेरा अल्लाह हुन् । उनले नै (तिमीकहाँ) मलाई सम्मानजनक बास प्रदान गरेका छन् । वस्तुतः अत्याचार गर्ने व्यक्तिहरू कदापि कृतार्थ हुन सक्दैनन् ।

وَرَاوَدَتْهُ الَّتِىْ هُوَ فِىْ بَيْتِهَا عَنْ نَّفْسِهٖ وَغَلَّقَتِ الْاَبْوَابَ وَقَالَتْ هَيْتَ لَكَ ؕ قَالَ مَعَاذَ اللّٰهِ اِنَّهٗ رَبِّىْۤ اَحْسَنَ مَثْوَاىَ ؕ اِنَّهٗ لَا يُفْلِحُ الظّٰلِمُوْنَ ﴿٢٣﴾

२५. तथा उनको प्रेममा डुब्न पुगी, यदि उनले आफ्ना प्रतिपालकको स्पष्ट चिह्न नदेखेका भए, (उनले त्यस्तो दृढसङ्कल्प प्रकट गर्न सक्दैनथे) । यसै प्रकार हुन गयो, ताकि हामी उनीबाट अवगुण र अश्लीलता निवारण (दूर) गर्न सकौं । निश्चय नै, उनी हामीद्वारा छानिएका भृत्यहरूमध्ये (एक) थिए ।

وَلَقَدْ هَمَّتْ بِهٖ ۚ وَهَمَّ بِهَا لَوْلَاۤ اَنْ رَّاٰ بُرْهَانَ رَبِّهٖ ؕ كَذٰلِكَ لِنَصْرِفَ عَنْهُ السُّوْٓءَ وَالْفَحْشَآءَ ؕ اِنَّهٗ مِنْ عِبَادِنَا الْمُخْلَصِيْنَ ﴿٢٤﴾

२६. तथा तिनीहरू दुबै ढोकातर्फ दौडे, तथा तिनले उनको कमिज पछिल्तिरबाट च्यातिन्, तथा ढोकामा तिनीहरूले तिन्का स्वामीलाई पाए । तिनले भनिन्, "त्यो व्यक्ति जसले तिम्री पत्नीसित नराम्रो व्यवहार गर्न चाह्यो, त्यसको दण्ड कैद अथवा यातनादायक सजायबाहेक के हुन सक्छ र?"

وَاسْتَبَقَا الْبَابَ وَقَدَّتْ قَمِيْصَهٗ مِنْ دُبُرٍ وَّاَلْفَيَا سَيِّدَهَا لَدَا الْبَابِ ؕ قَالَتْ مَا جَزَآءُ مَنْ اَرَادَ بِاَهْلِكَ سُوْٓءًا اِلَّاۤ اَنْ يُّسْجَنَ اَوْ عَذَابٌ اَلِيْمٌ ﴿٢٥﴾

२७. उनले भने, "यी तिनी नै हुन् जसले मेरा इच्छा विपरित बहकाउन चाहेकी थिइन् ।" तथा तिनकै परिवारको एकजना

قَالَ هِىَ رَاوَدَتْنِىْ عَنْ نَّفْسِىْ وَشَهِدَ شَاهِدٌ مِّنْ اَهْلِهَا ۚ اِنْ كَانَ قَمِيْصُهٗ

قُدَّ مِنْ قُبُلٍ فَصَدَقَتْ وَ هُوَ مِنَ الْكٰذِبِيْنَ ﴿٢٧﴾

साक्षीले साक्षी दिँदै भन्यो, "यदि उनको कमिज अघिल्तिरबाट च्यातेको भएमा, तिनले साँचो कुरा भनिन् र उनी मिथ्यावादी हुन् ।

وَاِنْ كَانَ قَمِيْصُهٗ قُدَّ مِنْ دُبُرٍ فَكَذَبَتْ وَهُوَ مِنَ الصّٰدِقِيْنَ ﴿٢٨﴾

२८. "परन्तु यदि उनको कमिज पछिल्तिरबाट च्यातिएको भएमा, तिनले मिथ्या बोलेकी हुन् र उनी सत्यवादीमध्ये रहेका छन् ।"

فَلَمَّا رَاٰ قَمِيْصَهٗ قُدَّ مِنْ دُبُرٍ قَالَ اِنَّهٗ مِنْ كَيْدِكُنَّ ؕ اِنَّ كَيْدَكُنَّ عَظِيْمٌ ﴿٢٩﴾

२९. अतः जब उसले उनको कमिज पछिल्तिरबाट च्यातिएको देख्यो, उसले भन्यो, "निस्सन्देह यो तिमी महिलाहरूको चतुऱ्याईं हो । तिमीहरू- को चतुऱ्याईं निश्चयपूर्वक भयानक हुनेगर्छ ।

يُوْسُفُ اَعْرِضْ عَنْ هٰذَا ٜ وَ اسْتَغْفِرِيْ لِذَنْۢبِكِ ۚۖ اِنَّكِ كُنْتِ مِنَ الْخٰطِـِٕيْنَ ﴿٣٠﴾

३०. "हे यूसुफ, यस कुराबाट विमुख होउ तथा (ए महिला) तिमी, आफ्नो पापका निम्ति क्षमायाचना गर । निस्सन्देह तिमी दोषीहरूमध्ये(की) रहेकीछ्यौ ।"

وَ قَالَ نِسْوَةٌ فِى الْمَدِيْنَةِ امْرَاَتُ الْعَزِيْزِ تُرَاوِدُ فَتٰىهَا عَنْ نَّفْسِهٖ ۚ قَدْ شَغَفَهَا حُبًّا ؕ اِنَّا لَنَرٰىهَا فِيْ ضَلٰلٍ مُّبِيْنٍ ﴿٣١﴾

३१. तथा नगरका महिलाहरूले भने, "अजिजकी पत्नी आफ्नो नोकरलाई उसको इच्छा विपरित बहकाउन चाहन्छे । उसको प्रेमले त्यसको -मनलाई) मोहित गरेको छ । निस्सन्देह, हामी त्यस महिलालाई स्पष्टरूपमा दोषी देख्छौं ।"

فَلَمَّا سَمِعَتْ بِمَكْرِهِنَّ اَرْسَلَتْ اِلَيْهِنَّ وَ اَعْتَدَتْ لَهُنَّ مُتَّكَاً وَّ اٰتَتْ كُلَّ وَاحِدَةٍ مِّنْهُنَّ سِكِّيْنًا وَّ قَالَتِ اخْرُجْ عَلَيْهِنَّ ۚ فَلَمَّا رَاَيْنَهٗۤ اَكْبَرْنَهٗ وَ قَطَّعْنَ اَيْدِيَهُنَّ وَ قُلْنَ حَاشَ لِلّٰهِ مَا هٰذَا بَشَرًا ؕ اِنْ هٰذَاۤ اِلَّا مَلَكٌ كَرِيْمٌ ﴿٣٢﴾

३२. तथा जब तिनले तिनीहरूको धूर्त योजना सुनिन्, तिनीहरूलाई (निमन्त्रणा) सन्देश पठाइन् तथा तिनीहरूका निम्ति भोजनको व्यवस्था गरिन्, तथा तिनीहरूमध्ये प्रत्येकलाई एउटा एउटा छुरी दिइन् र (यूसुफलाई) भनिन्, "तिनीहरूका सामुन्ने आउ ।" तथा जब तिनीहरूले उनलाई देखे उनलाई महान व्यक्ति ठाने तथा आफ्ना

हात काटे* तथा तिनीहरूले भने, अल्लाह परम प्रशंसनीय छन् । यिनी त मानिस होइनन्, परन्तु यिनी त एकजना महान फरिस्ता पो हुन् ।"

قَالَتْ فَذٰلِكُنَّ الَّذِيْ لُمْتُنَّنِيْ فِيْهِ ؕ وَلَقَدْ رَاوَدْتُّهٗ عَنْ نَّفْسِهٖ فَاسْتَعْصَمَ ؕ وَلَئِنْ لَّمْ يَفْعَلْ مَاۤ اٰمُرُهٗ لَيُسْجَنَنَّ وَلَيَكُوْنًا مِّنَ الصّٰغِرِيْنَ ﴿٣٢﴾

३३. तिनले भनिन्, "यही नै त्यो (व्यक्ति) हो जसका सम्बन्धमा तिमीहरूले मलाई दोष लगाएका थियौ । मैले त्यसलाई उसको इच्छाविरुद्ध बहकाउन चाहेकी थिएँ, परन्तु उसले स्वयम्लाई (पापबाट) बचायो । तथा अब यदि उसले मेरो आदेशानुसार कार्य गरेन भने, अवश्य त्यसलाई कैद गरिनेछ तथा त्यो (एउटा) तिरस्कृत व्यक्ति स्वरूप बन्नेछ ।

قَالَ رَبِّ السِّجْنُ اَحَبُّ اِلَيَّ مِمَّا يَدْعُوْنَنِيْۤ اِلَيْهِ ۚ وَاِلَّا تَصْرِفْ عَنِّيْ كَيْدَهُنَّ اَصْبُ اِلَيْهِنَّ وَاَكُنْ مِّنَ الْجٰهِلِيْنَ ﴿٣٣﴾

३४. उनले भने, "हे मेरा अल्लाह, जुन कार्यतर्फ तिनीहरू मलाई डाक्छन् त्योभन्दा त कारागार नै मेरा निम्ति म उचित ठान्छु, तथा तिनीहरूको धुर्त्याई मबाट तिमीले दूर नगरेमा म तिनीहरूतर्फ झुक्नेछु तथा अज्ञानी व्यक्तिहरूमध्ये बन्न

---

* कत्ता' अना अइदियाहुन्ना قَطَّعْنَ اَيْدِيَهُنَّ (आफ्ना हात काटे) भन्ने उक्त शब्दहरूलाई शाब्दिक अथवा रूपकात्मक अर्थमा प्रयोग गरी बुझ्न सकिन्छ, जस्तै, हजरत इमाम राघिबले पवित्र कुरानमा उक्त शब्दको प्रयोगको उदाहरण दिएर दुबै प्रकारको प्रयोगविधिको उल्लेख गरेका छन् ।

यहाँ قَطَّعْنَ اَيْدِيَهُنَّ (कत्ता' अन अइदियाहुन्ना) को शाब्दिक अर्थ कुनै धारिलो हतियारले एउटा व्यक्तिको हात काटेर अलग गर्नु हुनेछ । उक्त रचनामा यो अकल्पनीय रहेको छ र पवित्र कुरानको त्यो अभिप्राय कुनै रूपले हुनै सक्दैन । केही विद्वानहरूले त्यसको वैकल्पिकस्वरूप अति नगण्य आहतहरूतर्फ सङ्केत गर्दै काट्ने कार्यलाई संक्षिप्तरूपमा वर्णन गर्ने प्रयास गरेका छन् । परन्तु अरबी प्रयोगविधिले यसको पुष्टि गर्दैन किनभने ( قطع (कत्ता:')को मापदण्डमा) मौलिक अर्थमा निहित जोड र तीव्रताले उक्त कोमल (हलुका) गूढार्थको अनुमति नै दिँदैन । त्यसकारण शाब्दिक र रूपकात्मक अर्थको बीचको (अर्थ) रोज्ने (मार्ग) मात्र शेष रहन्छ तथा वर्णित रचनाको उक्त अर्थ– उनलाई दुष्प्राप्य र आफ्ना हातको पहुँचबाट धेरै माथिका रहेको अनुभव गरी तिनीहरूले आफ्नो पराजय स्वीकार गरेका थिए (भन्ने) अभिव्यक्तिबाट मात्रै यथोचित रूपकात्मक अर्थ बुझ्न सकिन्छ भन्ने हाम्रो विश्वास रहेको छ ।

पुग्नेछु ।"

३५. अत: उनका अल्लाहले उनको प्रार्थना सुने, तथा उनीबाट तिनीहरूको धुर्त्याइँ दूर गरे । वस्तुत: उनी सर्वस्रोता, सर्वज्ञ रहेका छन् ।

فَاسْتَجَابَ لَهُ رَبُّهُ فَصَرَفَ عَنْهُ كَيْدَهُنَّ ۚ إِنَّهُ هُوَ السَّمِيعُ الْعَلِيمُ ﴿٣٤﴾

३६. त्यसपछि तिनीहरू (पुरुषहरू) ले उनी निर्दोष रहेको लक्षण देखेपछि तिनीहरूबीच (आफ्नो प्रसिद्धि बचाउनका निम्ति भए -पनि) उनलाई केही समयका लागि कारागारमा राख्नु पर्छ भन्ने कुरा भयो ।

ثُمَّ بَدَا لَهُم مِّن بَعْدِ مَا رَأَوُا الْآيَاتِ لَيَسْجُنُنَّهُ حَتَّىٰ حِينٍ ﴿٣٥﴾

३७. तथा कारागारमा उनीसितै दुईजना युवकहरूले पनि प्रवेश गरे । तिनीहरूमध्ये एकजना (युवक)ले भन्यो, "मैले (सपनामा) आफूलाई मदिरा निचोर्दै गरेको देखे ।" तथा अर्को (युवक)ले भन्यो, "मैले स्वयम्लाई (सपनामा) आफ्नो टाउकोमाथि रोटी बोकेको जसबाट पक्षीहरूले खाँदै गरेको देखें । तिमी हामीलाई त्यसको स्वप्नफल सम्झाउ; किनभने हामी तिमीलाई सत्यनिष्ठ व्यक्तिहरूमध्ये (एक) ठान्छौं ।"

وَدَخَلَ مَعَهُ السِّجْنَ فَتَيَانِ ۖ قَالَ أَحَدُهُمَا إِنِّي أَرَانِي أَعْصِرُ خَمْرًا ۖ وَقَالَ الْآخَرُ إِنِّي أَرَانِي أَحْمِلُ فَوْقَ رَأْسِي خُبْزًا تَأْكُلُ الطَّيْرُ مِنْهُ ۖ نَبِّئْنَا بِتَأْوِيلِهِ ۖ إِنَّا نَرَاكَ مِنَ الْمُحْسِنِينَ ﴿٣٦﴾

३८. उनले उत्तर दिए, "तिमीहरूलाई दिइने भोजन आइपुगेको छैन र त्यो तिमीहरूसमक्ष आउनुभन्दा अघि नै म त्यसको (सपनाको) भावार्थ तिमीलाई सम्झाइदिनेछु । मेरा अल्लाहले मलाई सिकाएको -ज्ञान) द्वारा नै यसो गर्नु सम्भव भएको छ । जसले अल्लाहप्रति विश्वास गर्दैनन् र जुन व्यक्तिहरू परलोकका सम्बन्धमा अविश्वासी रहेका छन् ती जातिहरूको धर्मलाई मैले त्यागेको छु ।

قَالَ لَا يَأْتِيكُمَا طَعَامٌ تُرْزَقَانِهِ إِلَّا نَبَّأْتُكُمَا بِتَأْوِيلِهِ قَبْلَ أَن يَأْتِيَكُمَا ۚ ذَٰلِكُمَا مِمَّا عَلَّمَنِي رَبِّي ۚ إِنِّي تَرَكْتُ مِلَّةَ قَوْمٍ لَّا يُؤْمِنُونَ بِاللَّهِ وَهُم بِالْآخِرَةِ هُمْ كَافِرُونَ ﴿٣٧﴾

३९. "तथा मैले आफ्ना पितृहरू, इब्राहिम र इस्हाक तथा याकूबको धर्मको अनुसरण गरेको छु । कसैलाई पनि अल्लाहको सहभागीस्वरूप तुल्याउने हाम्रो अधिकार छैन । हामीमाथि तथा मानवजातिमाथि यो अल्लाहको अनुग्रह रहेको छ, परन्तु अधिकतर मानिसहरू भने अकृतज्ञ रहेका छन् ।

وَاتَّبَعْتُ مِلَّةَ اٰبَآءِيْٓ اِبْرٰهِيْمَ وَاِسْحٰقَ وَيَعْقُوْبَ ۚ مَا كَانَ لَنَآ اَنْ نُّشْرِكَ بِاللّٰهِ مِنْ شَيْءٍ ۚ ذٰلِكَ مِنْ فَضْلِ اللّٰهِ عَلَيْنَا وَعَلَى النَّاسِ وَلٰكِنَّ اَكْثَرَ النَّاسِ لَا يَشْكُرُوْنَ ﴿٣٨﴾

४०. "हे मेरा कारागारका दुइ साथीहरू हो ! के विभिन्न थरिका अल्लाहहरू बेस हुन् अथवा केवल एक, परमश्रेष्ठ अल्लाह?

يٰصَاحِبَيِ السِّجْنِ ءَاَرْبَابٌ مُّتَفَرِّقُوْنَ خَيْرٌ اَمِ اللّٰهُ الْوَاحِدُ الْقَهَّارُ ﴿٣٩﴾

४१. "तिमीहरू अल्लाहलाई छाडी (केवल) तिमीहरूले र तिमीहरूका पुर्खाहरूले लिने गरेका ती नामहरूको उपासना गर्छौ जसबारे अल्लाहले कुनै प्रमाण अवतीर्ण गरेका छैनन् । निर्णयका स्वामी त केवल अल्लाह रहेका छन् । उनीबाहेक अन्य कसैको उपासना नगर्नू भनी उनले तिमीहरूलाई आदेश दिएका छन् । यही नै विशुद्ध* धर्म हो, परन्तु अधिकतर मानिसहरू जान्दैनन् ।

مَا تَعْبُدُوْنَ مِنْ دُوْنِهٖٓ اِلَّآ اَسْمَآءً سَمَّيْتُمُوْهَآ اَنْتُمْ وَاٰبَآؤُكُمْ مَّآ اَنْزَلَ اللّٰهُ بِهَا مِنْ سُلْطٰنٍ ۚ اِنِ الْحُكْمُ اِلَّا لِلّٰهِ ۚ اَمَرَ اَلَّا تَعْبُدُوْٓا اِلَّآ اِيَّاهُ ۚ ذٰلِكَ الدِّيْنُ الْقَيِّمُ وَلٰكِنَّ اَكْثَرَ النَّاسِ لَا يَعْلَمُوْنَ ﴿٤٠﴾

४२. "हे मेरा कारागारका दुइ साथीहरू हो ! तिमीहरूमध्ये एकजनाले चाँहि आफ्ना स्वामीलाई मदिरा पियाउनेछौ; तथा अर्कालाई भने शूली दिइनेछ र उसका टाउकाबाट पक्षीहरूले खानेछन् । जसबारे तिमीहरूले सोधेका थियौ त्यसबारे निर्णय गरिएको छ ।

يٰصَاحِبَيِ السِّجْنِ اَمَّآ اَحَدُكُمَا فَيَسْقِيْ رَبَّهٗ خَمْرًا ۚ وَاَمَّا الْاٰخَرُ فَيُصْلَبُ فَتَاْكُلُ الطَّيْرُ مِنْ رَّاْسِهٖ ۚ قُضِيَ الْاَمْرُ الَّذِيْ فِيْهِ تَسْتَفْتِيٰنِ ﴿٤١﴾

---

* कायुयेम ( قَيِّمٌ ) शब्दमा पवित्र कुरानको प्रयोगविधिनुसार दृढ, सशक्त तथा स्थिररहने उचित सामर्थ्य र शक्तियुक्त गूढार्थ रहेको छ । यसले सीधा (सरल) र शुद्ध हुने योग्यतातर्फ पनि सङ्केत गर्छ । त्यसैकारण सबै धर्महरूमा एकसमान रहेका आस्थाको (विश्वासको) मौलिक तथा अभिन्न अंशहरूलाई पवित्र कुरानमा दीनुल कायुयेमा: دِيْنُ الْقَيِّمُ भनी वर्णन गरिएको छ । हेर्नुहोस् ९८ : ६ (अल् बयि्यना ) ।

وَقَالَ لِلَّذِيْ ظَنَّ اَنَّهٗ نَاجٍ مِّنْهُمَا اذْكُرْنِيْ عِنْدَ رَبِّكَ ز فَاَنْسٰىهُ الشَّيْطٰنُ ذِكْرَ رَبِّهٖ فَلَبِثَ فِي السِّجْنِ بِضْعَ سِنِيْنَ ﴿٤٢﴾

४२. तथा ती दुबैमध्ये जुनचाहिँ छुट्नेछ भनी उनले ठानेका थिए उसलाई उनले भने: "आफ्ना स्वामीसमक्ष मेरो चर्चा गरेस् ।" परन्तु सैतानले (त्यसबारे) आफ्ना स्वामीसमक्ष चर्चा गर्नबाट उसलाई भुलायो, अत उनी केही वर्षसम्म कारागारमै रहे ।

وَقَالَ الْمَلِكُ اِنِّيْٓ اَرٰى سَبْعَ بَقَرٰتٍ سِمَانٍ يَّاْكُلُهُنَّ سَبْعٌ عِجَافٌ وَّ سَبْعَ سُنْۢبُلٰتٍ خُضْرٍ وَّ اُخَرَ يٰبِسٰتٍ ؕ يٰٓاَيُّهَا الْمَلَاُ اَفْتُوْنِيْ فِيْ رُءْيَايَ اِنْ كُنْتُمْ لِلرُّءْيَا تَعْبُرُوْنَ ﴿٤٣﴾

४४. राजाले भने, "मैले (सपनामा) सातवटा मोटा गाईहरूलाई सातवटा दुब्ला गाईहरूले खाँदै गरेको देखे तथा सातवटा अन्नका हरिया बालाहरू तथा अन्य (सातवटा) सुकेका बालाहरू देखें । हे मुखिया हो, यदि तिमीहरू सपनाको व्याख्या गर्न जान्दछौ भने मलाई मेरा सपनाको भावार्थ बताऊ ।"

قَالُوْٓا اَضْغَاثُ اَحْلَامٍ ۚ وَمَا نَحْنُ بِتَاْوِيْلِ الْاَحْلَامِ بِعٰلِمِيْنَ ﴿٤٤﴾

४५. तिनीहरूले उत्तर दिए, "यी विश्रृंखल सपनाहरू हुन्, तथा यस्ता विश्रृंखल सपनाहरूको भावार्थ हामी जान्देनौं ।"

وَقَالَ الَّذِيْ نَجَا مِنْهُمَا وَادَّكَرَ بَعْدَ اُمَّةٍ اَنَا اُنَبِّئُكُمْ بِتَاْوِيْلِهٖ فَاَرْسِلُوْنِ ﴿٤٥﴾

४६. तथा ती दुइमध्ये जेलबाट छुटेको त्यस व्यक्तिले धेरै समयपछि (यूसुफलाई) स्मरण गरी भन्यो, "म तिमीहरूलाई यसको भावार्थबाट अवगत गराउनेछु, अत: तिमीहरू मलाई (यूसुफतर्फ) पठाऊ ।"

يُوْسُفُ اَيُّهَا الصِّدِّيْقُ اَفْتِنَا فِيْ سَبْعِ بَقَرٰتٍ سِمَانٍ يَّاْكُلُهُنَّ سَبْعٌ عِجَافٌ وَّ سَبْعِ سُنْۢبُلٰتٍ خُضْرٍ وَّ اُخَرَ يٰبِسٰتٍ ۙ لَّعَلِّيْٓ اَرْجِعُ اِلَى النَّاسِ لَعَلَّهُمْ يَعْلَمُوْنَ ﴿٤٦﴾

४७. "हे सत्यवादी पुरुष, यूसुफ ! हामीलाई सातवटा मोटा गाईहरूलाई सातवटा दुब्ला गाईहरूले खाएको र सातवटा हरिया अन्नका बाला र अन्य (सातवटा) ओइलाएका बालाहरूको भावार्थ बताउ; ताकि म मानिसहरू कहाँ फर्केर जाउँ ताकि तिनीहरूले जानून् ।"

قَالَ تَزْرَعُوْنَ سَبْعَ سِنِيْنَ دَاَبًا ۚ فَمَا حَصَدْتُّمْ فَذَرُوْهُ فِيْ سُنْۢبُلِهٖٓ اِلَّا قَلِيْلًا مِّمَّا تَاْكُلُوْنَ ﴿٤٧﴾

४८. उनले उत्तर दिए, "तिमीहरूले सात वर्षसम्म कठिन परिश्रम र निरन्तरताका साथ खेती गर्नेछौं, अत:

तिमीहरूले काटेको अन्नमध्ये जति तिमीहरूले खानेछौ त्यसबाहेक बाँकी अन्न त्यसको बालामै रहन दिनू ।"

ثُمَّ يَأْتِي مِنْ بَعْدِ ذَٰلِكَ سَبْعٌ شِدَادٌ يَأْكُلْنَ مَا قَدَّمْتُمْ لَهُنَّ إِلَّا قَلِيلًا مِّمَّا تُحْصِنُونَ ﴿٤٨﴾

४९. "त्यसपछि पुनः सातवटा कठिन वर्षहरू आउनेछन् जसले त्यो तिमीहरूले जोगाउन सक्ने अलिकति अन्नबाहेक बाँकी सबै अन्न जुन तिमीहरूले तिनका निम्ति अग्रिमस्वरूप जम्मा राखेका थियौ, भक्षण गर्नेछन् ।"

ثُمَّ يَأْتِي مِنْ بَعْدِ ذَٰلِكَ عَامٌ فِيهِ يُغَاثُ النَّاسُ وَفِيهِ يَعْصِرُونَ ﴿٤٩﴾

५०. "त्यसपछि एउटा यस्तो वर्ष आउनेछ जब मानिसहरूलाई प्रचुर वर्षा प्रदान गरिनेछ तथा त्यस (वर्ष) तिनीहरूले पेलेर (रस र तेल निकाल्ने पर्याप्त फलहरू तथा तेलयुक्त दानाहरू प्राप्त गर्नेछन्) ।"

جَاءَهُ الرَّسُولُ قَالَ ارْجِعْ إِلَىٰ رَبِّكَ فَاسْأَلْهُ مَا بَالُ النِّسْوَةِ اللَّاتِي قَطَّعْنَ أَيْدِيَهُنَّ ۚ إِنَّ رَبِّي بِكَيْدِهِنَّ عَلِيمٌ ﴿٥٠﴾

५१. तथा राजाले भने, "उनलाई मसमक्ष ल्याऊ ।" परन्तु जब राजाको दूत उनीसमक्ष आयो, (तब) उनले भने, "फर्केर आफ्ना स्वामीसमक्ष जाउ तथा जुन महिलाहरूले आफ्ना हात काटेका थिए* तिनीहरूको के हाल छ भनी उनलाई सोध; वस्तुतः तिनीहरूको कुचकबारे मेरा अल्लाहलाई पूरा जानकारी छ ।

قَالَ مَا خَطْبُكُنَّ إِذْ رَاوَدتُّنَّ يُوسُفَ عَن نَّفْسِهِ ۚ قُلْنَ حَاشَ لِلَّهِ مَا عَلِمْنَا عَلَيْهِ مِن سُوءٍ ۚ قَالَتِ امْرَأَتُ الْعَزِيزِ الْآنَ حَصْحَصَ الْحَقُّ أَنَا رَاوَدتُّهُ عَن نَّفْسِهِ وَإِنَّهُ لَمِنَ الصَّادِقِينَ ﴿٥١﴾

५२. उनले (राजाले ती महिलाहरूलाई) भने, "जब तिमीहरूले यूसुफलाई उनको इच्छाविरुद्ध बहकाउन चाहेका थियौ (तब) तिमीहरूलाई के भएको थियो?" तिनीहरूले भने, "यस्ता मानिसका सृष्टिकर्ता अल्लाह (निस्सन्देह) अति प्रशंसनीय छन् । हामीलाई त उनको कुनै अवगुणबारे ज्ञात छैन ।" अजिजकी पत्नीले भनिन्, "अब सत्य खुल्न आयो ।

* आयत नं. ३२ को टिका हेर्नुहोस् ।

मैले नै उनीलाई उनको इच्छाविरुद्ध बहकाउन चाहेकी थिएँ, तथा निःसन्देह उनी सत्यव्रत रहेका छन् ।"

ذٰلِكَ لِيَعْلَمَ اَنِّيْ لَمْ اَخُنْهُ بِالْغَيْبِ وَاَنَّ اللّٰهَ لَا يَهْدِيْ كَيْدَ الْخَآئِنِيْنَ ﴿٥٢﴾

५३. (यूसुफले भने), "मैले उनको अनुपस्थितिमा उनीसित विश्वासघात गरेको थिइनँ भन्ने कुरा उनले (अजिजले) जानुन् तथाअल्लाहले विश्वासघातीहरूको चालबाजीलाई कृतकार्य हुन दिँदैनन् (भन्ने कुरो पनि स्पष्ट होस्) भनी (मैले त्यो छानविन गर्ने अनुरोध गरेको थिएँ) ।

وَمَآ اُبَرِّئُ نَفْسِيْ ۚ اِنَّ النَّفْسَ لَاَمَّارَةٌۢ بِالسُّوْٓءِ اِلَّا مَا رَحِمَ رَبِّيْ ۚ اِنَّ رَبِّيْ غَفُوْرٌ رَّحِيْمٌ ﴿٥٣﴾

५४. "म स्वयम्लाई दुर्बलतामुक्त ठान्दिन, किनभने मानिसको मनले कुकृत्य गर्ने प्रेरणा दिने गर्छ, सिवाय त्यो व्यक्ति जसमाथि मेरा अल्लाहको दया रहेको छ । निश्चय नै, मेरा अल्लाह परम क्षमाशील, परम करुणाशील छन् ।"

وَقَالَ الْمَلِكُ ائْتُوْنِيْ بِهٖٓ اَسْتَخْلِصْهُ لِنَفْسِيْ ۚ فَلَمَّا كَلَّمَهٗ قَالَ اِنَّكَ الْيَوْمَ لَدَيْنَا مَكِيْنٌ اَمِيْنٌ ﴿٥٤﴾

५५. तथा राजाले भने, "उनलाई मेरासमक्ष ल्याऊ, ताकि म उनलाई आफ्ना निम्ति नियुक्त गर्न सकुँ ।" तथा जब उनले उनीसित वार्ता गरे, तब उनले भने, "आज तिमी हामीसमक्ष एकजना सुप्रतिष्ठित पदाधिकारी (तथा) विश्वसनीय प्रमाणित भएका छौ ।"

قَالَ اجْعَلْنِيْ عَلٰى خَزَآئِنِ الْاَرْضِ ۚ اِنِّيْ حَفِيْظٌ عَلِيْمٌ ﴿٥٥﴾

५६. उनले भने, "मलाई देशका खजानाहरूप्रति नियुक्त गर, किनभने म उत्तम संरक्षक (तथा) ज्ञान प्राप्त छु ।"

وَكَذٰلِكَ مَكَّنَّا لِيُوْسُفَ فِى الْاَرْضِ ۚ يَتَبَوَّاُ مِنْهَا حَيْثُ يَشَآءُ ۚ نُصِيْبُ بِرَحْمَتِنَا مَنْ نَّشَآءُ وَلَا نُضِيْعُ اَجْرَ الْمُحْسِنِيْنَ ﴿٥٦﴾

५७. यसप्रकार यूसुफलाई हामीले त्यस देशमा सुप्रतिष्ठित तुल्याएका थियौं । जहाँ उनलाई इच्छा लाग्थ्यो त्यहीं उनी बस्ने गर्थे । जसप्रति चाहन्छौं हामी आफ्नो करुणा प्रदान गर्छौं, तथा सत्यनिष्ठ व्यक्तिहरूको प्रतिदानलाई हामी नष्ट हुन दिँदैनौं ।

وَلَاَجْرُ الْاٰخِرَةِ خَيْرٌ لِّلَّذِيْنَ اٰمَنُوْا وَكَانُوْا يَتَّقُوْنَ ﴿٥٨﴾

५८. तथा परलोकको प्रतिदान निश्चय नै ती व्यक्तिहरूका निम्ति उत्तम रहेको छ जसले विश्वास स्थापित गर्छन् तथा जो अल्लाहसित डराउँछन् ।

وَجَآءَ اِخْوَةُ يُوْسُفَ فَدَخَلُوْا عَلَيْهِ فَعَرَفَهُمْ وَهُمْ لَهٗ مُنْكِرُوْنَ ﴿٥٩﴾

५९. तथा यूसुफका दाजुभाइहरू आए र उनीसमक्ष उपस्थित भए, तथा उनले तिनीहरूलाई चिने, परन्तु तिनीहरूले उनलाई अपरिचित व्यक्ति नै ठाने ।

وَلَمَّا جَهَّزَهُمْ بِجَهَازِهِمْ قَالَ ائْتُوْنِيْ بِاَخٍ لَّكُمْ مِّنْ اَبِيْكُمْ ۚ اَلَا تَرَوْنَ اَنِّيْٓ اُوْفِي الْكَيْلَ وَاَنَا خَيْرُ الْمُنْزِلِيْنَ ﴿٦٠﴾

६०. तथा जब उनले तिनीहरूलाई तिनीहरूको खाद्यान्न प्रदान गरे । उनले भने, "तिमीहरूका पिताका तर्फबाट जन्मेका तिम्रा भाइलाई मेरा समक्ष लिएर आऊ । म तिमीहरूलाई तौल पूरा गरी दिन्छु र म उत्तम अतिथि सत्कारकर्ता हुँ भन्ने कुरा तिमीहरू जान्दैनौ र?

فَاِنْ لَّمْ تَاْتُوْنِيْ بِهٖ فَلَا كَيْلَ لَكُمْ عِنْدِيْ وَلَا تَقْرَبُوْنِ ﴿٦١﴾

६१. "परन्तु यदि तिमीहरूले उनलाई मेरासमक्ष ल्याएनौ भने, तिमीहरूलाई मेरा तर्फबाट तोकिएको माप (अन्न) प्राप्त हुनेछैन, न त तिमीहरू मेरा निकट आउन सक्नेछौ ।"

قَالُوْا سَنُرَاوِدُ عَنْهُ اَبَاهُ وَاِنَّا لَفٰعِلُوْنَ ﴿٦٢﴾

६२. तिनीहरूले उत्तर दिए, "उनका सम्बन्धमा हामी उनका पितालाई उनीसित अलग हुन मनाउने प्रयास गर्नेछौं तथा हामी अवश्य (यो काम) गरेरै छाड्नेछौ ।"

وَقَالَ لِفِتْيٰنِهِ اجْعَلُوْا بِضَاعَتَهُمْ فِيْ رِحَالِهِمْ لَعَلَّهُمْ يَعْرِفُوْنَهَآ اِذَا انْقَلَبُوْٓا اِلٰٓى اَهْلِهِمْ لَعَلَّهُمْ يَرْجِعُوْنَ ﴿٦٣﴾

६३. तथा उनले आफ्ना सेवकहरूलाई भने, "तिनीहरूको पूँजी (पनि) तिनीहरूकै बोराहरूमा राखिदेउ, ताकि तिनीहरू आफ्ना परिवारतर्फ फर्किएर गएपछि यस कुरालाई सम्झिन सकून्, सम्भवतः तिनीहरू फर्केर आउलान् ।"

فَلَمَّا رَجَعُوْٓا اِلٰٓى اَبِيْهِمْ قَالُوْا يٰٓاَبَانَا مُنِعَ مِنَّا الْكَيْلُ فَاَرْسِلْ مَعَنَآ اَخَانَا

६४. तथा जब तिनीहरू आफ्ना पितासमक्ष पुगे, तब तिनीहरूले भने:

نَكْتَلْ وَإِنَّا لَهُ لَحَافِظُونَ ﴿٦٣﴾

"हे हाम्रा पिता, हामीलाई निर्धारित गरिएको (अरू थप) माप (अन्न) दिनबाट अस्वीकार गरिएको छ, त्यसकारण हामीसित हाम्रा भाइलाई पठाउनोस्, ताकि हामी आफ्नो निर्धारित (अन्नको) माप प्राप्त गर्न सकौं, तथा हामी अवश्य उनको ध्यान राख्नेछौं ।"

قَالَ هَلْ آمَنُكُمْ عَلَيْهِ إِلَّا كَمَا أَمِنتُكُمْ عَلَىٰ أَخِيهِ مِن قَبْلُ ۖ فَاللَّهُ خَيْرٌ حَافِظًا ۖ وَهُوَ أَرْحَمُ الرَّاحِمِينَ ﴿٦٤﴾

६५. उनले भने, यसका सम्बन्धमा तिमीहरूप्रति भरोसा राख्न म सक्दिन । "सिवाय त्यसरी नै जसरी यसका भाइका सम्बन्धमा पहिला मैले तिमीहरूप्रति भरोसा गरेको थिएँ।परन्तु अल्लाह नै परम संरक्षक रहेका छन्, तथा उनी नै करुणाशीलहरूमा परम करुणाशील पनि रहेका छन् ।"

وَلَمَّا فَتَحُوا مَتَاعَهُمْ وَجَدُوا بِضَاعَتَهُمْ رُدَّتْ إِلَيْهِمْ ۖ قَالُوا يَا أَبَانَا مَا نَبْغِي ۖ هَٰذِهِ بِضَاعَتُنَا رُدَّتْ إِلَيْنَا ۖ وَنَمِيرُ أَهْلَنَا وَنَحْفَظُ أَخَانَا وَنَزْدَادُ كَيْلَ بَعِيرٍ ۖ ذَٰلِكَ كَيْلٌ يَسِيرٌ ﴿٦٥﴾

६६. तथा जब तिनीहरूले आफ्ना मालतालहरू खोले, तिनीहरूले आफ्नो पूँजी फर्काएको पाए । तिनीहरूले भने, "हे हाम्रा पिता, योभन्दा अरू हामीले के इच्छा गर्न सक्छौं त? लौ हेर, हाम्रो धन हामीलाई फर्काइएको छ । हामी आफ्ना परिवारका निम्ति खाद्यान्न ल्याउनेछौं, तथा आफ्नो भाइको सुरक्षा गर्नेछौं र एउटा उँटले (बोक्ने) बोझ बढी प्राप्त गर्नेछौं । यो सहजै (प्राप्त हुने) बोझ हो ।"

قَالَ لَنْ أُرْسِلَهُ مَعَكُمْ حَتَّىٰ تُؤْتُونِ مَوْثِقًا مِّنَ اللَّهِ لَتَأْتُنَّنِي بِهِ إِلَّا أَن يُحَاطَ بِكُمْ ۖ فَلَمَّا آتَوْهُ مَوْثِقَهُمْ قَالَ اللَّهُ عَلَىٰ مَا نَقُولُ وَكِيلٌ ﴿٦٦﴾

६७. उनले भने, म उसलाई तिमीहरूसित कदापि पठाउनेछैन । जबसम्म तिमीहरू, उसलाई अवश्य मसमक्ष ल्याउनेछौ भन्ने अल्लाहको नाममा दृढ वचन मलाई दिँदैनौ" सिवाय के भने तिमीहरूलाई नै घेरिइयोस् । तथा जब तिनीहरूले उनलाई आफ्नो दृढवचन दिए, उनले भने, "हाम्रा यस वार्ताका लागि अल्लाह नै साक्षी

रहेका छन् ।

وَقَالَ يٰبَنِيَّ لَا تَدْخُلُوْا مِنْۢ بَابٍ
وَّاحِدٍ وَّادْخُلُوْا مِنْ اَبْوَابٍ مُّتَفَرِّقَةٍ ؕ
وَمَاۤ اُغْنِيْ عَنْكُمْ مِّنَ اللّٰهِ مِنْ شَيْءٍ ؕ اِنِ
الْحُكْمُ اِلَّا لِلّٰهِ ؕ عَلَيْهِ تَوَكَّلْتُ ۚ وَعَلَيْهِ
فَلْيَتَوَكَّلِ الْمُتَوَكِّلُوْنَ ﴿٦٨﴾

६८. तथा उनले भने, "हे मेरा पुत्र हो, एउटै ढोकाबाट प्रवेश नगर्नू, अपितु विभिन्न ढोकाहरूबाट प्रवेश गर्नू, अल्लाहको विरुद्ध म तिमीहरूको कुनै सहयोग गर्न सक्दिन । निर्णय त केवल अल्लाहकै हातमा छ । उनीमाथि नै म आफ्नो भरोसा राख्छु तथा सबै भरोसा गर्नेहरूले उनीमाथि नै भरोसा राख्नुपर्छ ।

وَلَمَّا دَخَلُوْا مِنْ حَيْثُ اَمَرَهُمْ اَبُوْهُمْ ؕ
مَا كَانَ يُغْنِيْ عَنْهُمْ مِّنَ اللّٰهِ مِنْ شَيْءٍ اِلَّا
حَاجَةً فِيْ نَفْسِ يَعْقُوْبَ قَضٰىهَا ؕ وَاِنَّهٗ
لَذُوْ عِلْمٍ لِّمَا عَلَّمْنٰهُ وَلٰكِنَّ اَكْثَرَ
النَّاسِ لَا يَعْلَمُوْنَ ﴿٦٩﴾

६९. तथा जब तिनीहरूले आफ्ना पिताको परामर्शअनुसार प्रवेश गरे, त्यसले उनीहरूलाई अल्लाहको इच्छा विरुद्ध लाभ पुऱ्याउन त सक्दैनथ्यो, परन्तु त्यो याकूबको (जेकोबको) एउटा आन्तरिक धोको थियो जसलाई उनले त्यसप्रकार पूरा गरे, तथा उनी निस्सन्देह (महान) ज्ञानका धनी थिए, किनभने हामीले उनलाई सिकाएका थियौं । परन्तु अधिकतर मानिसहरू जान्दैनन् ।

وَلَمَّا دَخَلُوْا عَلٰى يُوْسُفَ اٰوٰۤى اِلَيْهِ
اَخَاهُ قَالَ اِنِّيْۤ اَنَا اَخُوْكَ فَلَا تَبْتَئِسْ
بِمَا كَانُوْا يَعْمَلُوْنَ ﴿٧٠﴾

७०. तथा जब तिनीहरू यूसुफसमक्ष पुगे तब उनले आफ्ना भाइलाई आफूकहाँ स्थान प्रदान गरे । तथा उनले भने, "म तिम्रो दाजु हुँ, त्यसकारण (अब) तिनीहरूले गर्दैआएका कार्यहरूप्रति चिन्तित न होउ ।"

فَلَمَّا جَهَّزَهُمْ بِجَهَازِهِمْ جَعَلَ السِّقَايَةَ
فِيْ رَحْلِ اَخِيْهِ ثُمَّ اَذَّنَ مُؤَذِّنٌ اَيَّتُهَا
الْعِيْرُ اِنَّكُمْ لَسٰرِقُوْنَ ﴿٧١﴾

७१. तथा जब उनले तिनीहरूलाई तिनीहरूको खाद्यान्न उपलब्ध गराए तब उनले आफ्नो पिउने प्याला आफ्ना भाइको बोरामा राखी दिए । तब एकजना घोषणा गर्ने व्यक्तिले के घोषणा गऱ्यो भने, "ए यात्रीदल (का मानिसहरू) हो, तिमीहरू निश्चय नै चोरहरू रहेका छौ ।"

قَالُوْا وَاَقْبَلُوْا عَلَيْهِمْ مَّاذَا تَفْقِدُوْنَ ﴿٧١﴾

७२. तिनीहरूले उनीहरूतर्फ फर्किएर भने, “तिमीहरूको कुन वस्तु हराएको छ?”

قَالُوْا نَفْقِدُ صُوَاعَ الْمَلِكِ وَلِمَنْ جَآءَ بِهٖ حِمْلُ بَعِيْرٍ وَّاَنَا بِهٖ زَعِيْمٌ ﴿٧٢﴾

७३. तिनीहरूले उत्तर दिए, “हाम्रो शाही नाप लिने प्याला हराएको छ, तथा जसले त्यसलाई खोजेर ल्याउनेछ उसलाई एउटा उँटको भारी बराबर (अन्न) मिल्नेछ, तथा म त्यसको जिम्मेवार रहेको छु ।”

قَالُوْا تَاللّٰهِ لَقَدْ عَلِمْتُمْ مَّا جِئْنَا لِنُفْسِدَ فِي الْاَرْضِ وَمَا كُنَّا سٰرِقِيْنَ ﴿٧٣﴾

७४. तिनीहरूले उत्तर दिए, “अल्लाहको शपथ, हामी यस देशमा भ्रष्टाचार गर्न भनी आएका होइनौं र हामी चोर होइनौं भन्ने कुरा तिमीहरू राम्ररी जान्दछौ ।”

قَالُوْا فَمَا جَزَآؤُهٗۤ اِنْ كُنْتُمْ كٰذِبِيْنَ ﴿٧٤﴾

७५. तिनीहरूले भने, “यदि तिमीहरूले मिथ्या बोलेको (साबित) भएमा, त्यसको दण्ड के हुनेछ त?”

قَالُوْا جَزَآؤُهٗ مَنْ وُّجِدَ فِيْ رَحْلِهٖ فَهُوَ جَزَآؤُهٗ كَذٰلِكَ نَجْزِي الظّٰلِمِيْنَ ﴿٧٥﴾

७६. तिनीहरूले उत्तर दिए, “त्यसको दण्ड– जसका बोरामा त्यो पाइनेछ त्यही व्यक्ति नै त्यसको क्षतिपूर्तिस्वरूप हुनेछ । यसै प्रकार हामी अत्याचारीहरूलाई दण्ड दिने गर्छौं ।”

فَبَدَاَ بِاَوْعِيَتِهِمْ قَبْلَ وِعَآءِ اَخِيْهِ ثُمَّ اسْتَخْرَجَهَا مِنْ وِّعَآءِ اَخِيْهِ كَذٰلِكَ كِدْنَا لِيُوْسُفَ مَا كَانَ لِيَاْخُذَ اَخَاهُ فِيْ دِيْنِ الْمَلِكِ اِلَّاۤ اَنْ يَّشَآءَ اللّٰهُ نَرْفَعُ دَرَجٰتٍ مَّنْ نَّشَآءُ وَفَوْقَ كُلِّ ذِيْ عِلْمٍ عَلِيْمٌ ﴿٧٦﴾

७७. त्यसपछि उसले उनको (यूसुफको) भाइको बोराभन्दा पहिला तिनीहरूका बोराहरूको (तलासी) प्रारम्भ गर्‍यो, तब उसले त्यसलाई उनका भाइका बोराबाट निकाल्यो । यसप्रकार हामीले यूसुफका निम्ति योजना बनायौं । अल्लाहको (त्यो) इच्छा नरहेको भएता उनले त्यहाँको शाही कानुनअन्तर्गत आफ्ना भाइलाई रोक्न सक्ने थिएनन् । हामी जसलाई चाहन्छौं त्यसलाई पदोन्नति प्रदान गर्छौं, तथा हरेक ज्ञानपूर्णमाथि एउटा परमज्ञानपूर्ण (सत्ता) रहेको छ ।

قَالُوٓا إِن يَسْرِقْ فَقَدْ سَرَقَ أَخٌ لَّهُۥ مِن قَبْلُ ۚ فَأَسَرَّهَا يُوسُفُ فِى نَفْسِهِۦ وَلَمْ يُبْدِهَا لَهُمْ ۚ قَالَ أَنتُمْ شَرٌّ مَّكَانًا ۖ وَٱللَّهُ أَعْلَمُ بِمَا تَصِفُونَ ﴿٧٧﴾

७८. तिनीहरूले भने, "यदि उसले चोरेको हो भने यसअघि उसको एउटा दाइले (पनि) चोरेकै थियो ।" परन्तु यूसुफले त्यस कुरालाई आफ्नै हृदयमा लुकाए तथा तिनीहरूसमक्ष त्यसलाई प्रकट गरेनन् । उनले (यति नै) भने, "तिमीहरूको अवस्था निकृष्ट रहेको देखिन्छ, तथा जुन आरोप तिमीहरू लगाउँदैछौ त्यसलाई अल्लाह नै राम्ररी जान्दछन् ।"

قَالُوا يَٰٓأَيُّهَا ٱلْعَزِيزُ إِنَّ لَهُۥٓ أَبًا شَيْخًا كَبِيرًا فَخُذْ أَحَدَنَا مَكَانَهُۥٓ ۖ إِنَّا نَرَىٰكَ مِنَ ٱلْمُحْسِنِينَ ﴿٧٨﴾

७९. तिनीहरूले भने, "हे हाकिम, यिनका पिता अति वृद्ध छन्, त्यसकारण यिनका स्थानमा हामीमध्ये कुनै एकजनालाई राख, हामी त तिमीलाई पुण्यकर्मीहरूमध्येका एक ठान्छौं ।"

قَالَ مَعَاذَ ٱللَّهِ أَن نَّأْخُذَ إِلَّا مَن وَجَدْنَا مَتَٰعَنَا عِندَهُۥٓ إِنَّآ إِذًا لَّظَٰلِمُونَ ﴿٧٩﴾

८० उनले उत्तर दिए, "जसबाट हामीले आफ्नो वस्तु प्राप्त गरेका छौं, त्यसलाई छाडी अन्य (कुनै)लाई पक्रिनबाट अल्लाहले हामीलाई बचाउन्, त्यसो गरेमा निश्चय नै हामी अत्याचारी बन्नेछौं ।"

فَلَمَّا ٱسْتَيْـَٔسُوا مِنْهُ خَلَصُوا نَجِيًّا ۖ قَالَ كَبِيرُهُمْ أَلَمْ تَعْلَمُوٓا أَنَّ أَبَاكُمْ قَدْ أَخَذَ عَلَيْكُم مَّوْثِقًا مِّنَ ٱللَّهِ وَمِن قَبْلُ مَا فَرَّطتُمْ فِى يُوسُفَ ۖ فَلَنْ أَبْرَحَ ٱلْأَرْضَ حَتَّىٰ يَأْذَنَ لِىٓ أَبِىٓ أَوْ يَحْكُمَ ٱللَّهُ لِى ۖ وَهُوَ خَيْرُ ٱلْحَٰكِمِينَ ﴿٨٠﴾

८१.तथा जब तिनीहरू उनीबाट निराश भए, परस्पर व्यक्तिगत रूपमा वार्तालाप गर्दै तिनीहरू फर्किए । तिनीहरूको जेष्ठ (भ्राता)ले भन्यो, "तिमीहरूका पिताले तिमीहरूबाट अल्लाहको नाममा दृढवचन लिएका थिए भन्ने कुरा तिमीहरूलाई ज्ञात छैन र? तथा यूसुफसित तिमीहरूले गरेको अन्यायलाई स्मरण गर । त्यसकारण जबसम्म मेरा पिताको अनुमति प्राप्त हुँदैन अथवा मेरा सम्बन्धमा अल्लाहको कुनै निर्णय हुँदैन, तवसम्म म यस देशलाई त्याग्नेछैन । तथा उनी नै सर्वोत्कृष्ट निर्णायक रहेका छन् ।"

ٱرْجِعُوٓا إِلَىٰٓ أَبِيكُمْ فَقُولُوا يَٰٓأَبَانَآ إِنَّ

८२. "तिमीहरू आफ्ना पिताकहाँ फर्केर

ابْنَكَ سَرَقَ ۚ وَمَا شَهِدْنَا إِلَّا بِمَا عَلِمْنَا وَمَا كُنَّا لِلْغَيْبِ حٰفِظِيْنَ ۝٨١

जाऊ तथा भन, “हे हाम्रा पिता, तिम्रो पुत्रले चोरी गऱ्यो तथा हामीले जानेका कुराको बयान हामीले दियौं र हामी अदृश्य कुराको संरक्षण गर्न त सक्दैनथ्यौं

وَسْئَلِ الْقَرْيَةَ الَّتِيْ كُنَّا فِيْهَا وَالْعِيْرَ الَّتِيْٓ اَقْبَلْنَا فِيْهَا ۭ وَاِنَّا لَصٰدِقُوْنَ ۝٨٢

८३. “हामी जहाँ रहेका थियौं त्यस नगर का मानिसहरूलाई), तथा जुन यात्रीदलसित हामी आयौं तिनीहरूलाई सोध, तथा निश्चयपूर्वक हामी साँचो बोलिरहेका छौं ।”

قَالَ بَلْ سَوَّلَتْ لَكُمْ اَنْفُسُكُمْ اَمْرًا ۭ فَصَبْرٌ جَمِيْلٌ ۭ عَسَى اللّٰهُ اَنْ يَّاْتِيَنِيْ بِهِمْ جَمِيْعًا ۭ اِنَّهٗ هُوَ الْعَلِيْمُ الْحَكِيْمُ ۝٨٣

८४. उनले भने, “होइन, अपितु तिमीहरूको मनले तिमीहरूसमक्ष त्यसलाई कुनै उत्तम कुरो सदृश तुल्याएर देखाउनका निम्ति तिमीहरू- लाई धोका दिएको छ । अत: -म) उत्तम धैर्यधारण गर्नतर्फ (लाग्छु) । सम्भवत: तिनी- हरू सबैलाई अल्लाहले मेरासमक्ष ल्याउनेछन्, उनी नै सर्वज्ञ, तत्त्वज्ञ रहेका छन् ।”

وَتَوَلّٰى عَنْهُمْ وَقَالَ يٰٓاَسَفٰى عَلٰى يُوْسُفَ وَابْيَضَّتْ عَيْنٰهُ مِنَ الْحُزْنِ فَهُوَ كَظِيْمٌ ۝٨٤

८५. तथा उनी तिनीहरूबाट (अर्कोतिर) फर्किए र भने “हाय ! यूसुफका निम्ति मेरो यो पीर ।” तथा चिन्ताका कारण तिनका आँखा आँसुले परिपूर्ण हुन पुगे, तथा उनी (आफ्नो शोकलाई) दबाएरै राख्ने गर्थे ।

قَالُوْا تَاللّٰهِ تَفْتَؤُا تَذْكُرُ يُوْسُفَ حَتّٰى تَكُوْنَ حَرَضًا اَوْ تَكُوْنَ مِنَ الْهٰلِكِيْنَ ۝٨٥

८६. तिनीहरूले भने, “अल्लाहको शपथ, जबसम्म तिमी बिमारी हुँदैनौ अथवा मर्दैनौ तबसम्म यूसुफको कुरा गर्न तिमीले छाड्नेछैनौ ।”

قَالَ اِنَّمَآ اَشْكُوْا بَثِّيْ وَحُزْنِيْٓ اِلَى اللّٰهِ وَاَعْلَمُ مِنَ اللّٰهِ مَا لَا تَعْلَمُوْنَ ۝٨٦

८७. उनले उत्तर दिए, “म आफ्नो शोक र वेदना केवल अल्लाहसमक्ष प्रकट गर्छु, तथा अल्लाहबाट मलाई त्यो ज्ञान प्राप्त छ, जुन तिमीहरूलाई प्राप्त छैन ।”

يٰبَنِيَّ اذْهَبُوْا فَتَحَسَّسُوْا مِنْ يُّوْسُفَ وَاَخِيْهِ وَلَا تَايْـَٔسُوْا مِنْ رَّوْحِ

८८. “हे मेरा पुत्रहरू हो, तिमीहरू जाऊ र यूसुफ तथा उनका भाइलाई खोज र

اللّٰهِ ۚ إِنَّهُ لَا يَايْئَسُ مِنْ رَّوْحِ اللّٰهِ إِلَّا الْقَوْمُ الْكٰفِرُوْنَ ﴿٨٧﴾

अल्लाहको करुणाबाट निराश नहोऊ, किनभने अल्लाहको करुणाबाट त केवल अविश्वासी व्यक्तिहरू मात्र निराश हुने गर्छन् ।"

فَلَمَّا دَخَلُوْا عَلَيْهِ قَالُوْا يٰٓاَيُّهَا الْعَزِيْزُ مَسَّنَا وَاَهْلَنَا الضُّرُّ وَجِئْنَا بِبِضَاعَةٍ مُّزْجٰىةٍ فَاَوْفِ لَنَا الْكَيْلَ وَتَصَدَّقْ عَلَيْنَا ۚ إِنَّ اللّٰهَ يَجْزِى الْمُتَصَدِّقِيْنَ ﴿٨٨﴾

८९. तथा जब तिनीहरू उनी (यूसुफ) समक्ष आए, तिनीहरूले भने, "हे महामहिम, हामीलाई र हाम्रा परिवारलाई दरिद्रताले सताएको छ, तथा हामीले अति थोरै धन ल्याएका छौं । त्यसकारण, हामीलाई पूर्ण माप (अन्न) प्रदान गर, तथा हाम्रा निम्ति दानी बन । निश्चय नै, अल्लाहले दानपुण्य गर्नेहरूलाई प्रतिदान प्रदान गर्छन् ।"

قَالَ هَلْ عَلِمْتُمْ مَّا فَعَلْتُمْ بِيُوْسُفَ وَاَخِيْهِ إِذْ اَنْتُمْ جٰهِلُوْنَ ﴿٨٩﴾

९०. उनले भने, के तिमीहरूलाई थाहा छ?" "जब तिमीहरू अनभिज्ञ थियौ (तब) तिमीहरूले यूसुफ र उनका भाइसित के व्यवहार गरेका थियौ?

قَالُوْٓا ءَاِنَّكَ لَاَنْتَ يُوْسُفُ ۚ قَالَ اَنَا يُوْسُفُ وَهٰذَآ اَخِىْ ۚ قَدْ مَنَّ اللّٰهُ عَلَيْنَا ۚ إِنَّهُ مَنْ يَّتَّقِ وَيَصْبِرْ فَاِنَّ اللّٰهَ لَا يُضِيْعُ اَجْرَ الْمُحْسِنِيْنَ ﴿٩٠﴾

९१. तिनीहरूले उत्तर दिए, "के तिमी नै वास्तवमा यूसुफ हौ त?" उनले भने, "हो, म यूसुफ हुँ तथा यिनी मेरा भाइ हुन् । निस्सन्देह हामी दुबैमाथि अल्लाहले अनुग्रह गरेका छन् । वस्तुतः, जुन व्यक्ति धर्मपरायण र धैर्यशील रहेको छ– अल्लाहले त्यस्ता सत्कर्मीहरूको प्रतिदानलाई कदापि नष्ट हुन दिँदैनन् ।"

قَالُوْا تَاللّٰهِ لَقَدْ اٰثَرَكَ اللّٰهُ عَلَيْنَا وَاِنْ كُنَّا لَخٰطِـِٕيْنَ ﴿٩١﴾

९२. तिनीहरूले उत्तर दिए, "अल्लाहको शपथ ! निस्सन्देह अल्लाहले तिमीलाई हामीमाथि प्राधान्यता प्रदान गरेका छन् तथा निस्सन्देह हामी पापी थियौं ।"

قَالَ لَا تَثْرِيْبَ عَلَيْكُمُ الْيَوْمَ ۚ يَغْفِرُ اللّٰهُ لَكُمْ ۚ وَهُوَ اَرْحَمُ الرّٰحِمِيْنَ ﴿٩٢﴾

९३. उनले भने, "आज तिमीहरूमाथि कुनै प्रकारको आरोप (रहने) छैन, अल्लाहले तिमीहरूलाई क्षमादान गरुन् ! तथा उनी सबै दया गर्नेहरूभन्दा अधिक दयाशील

रहेका छन् ।

९४."मेरो यो कमिज लिएर जाऊ र यसलाई मेरा पिताका सामु प्रस्तुत गर ! उनलाई सबै कुरा थाहा हुनेछ । तथा तिमीहरू आफ्ना सम्पूर्ण परिवारलाई लिएर म समक्ष आऊ ।"

اِذْهَبُوْا بِقَمِيْصِيْ هٰذَا فَاَلْقُوْهُ عَلٰى وَجْهِ اَبِيْ يَاْتِ بَصِيْرًا ۚ وَاْتُوْنِيْ بِاَهْلِكُمْ اَجْمَعِيْنَ ﴿٩٣﴾

९५. तथा जब यात्रीदलले प्रस्थान गऱ्यो, तिनीहरूका पिताले भने, "निश्चय नै, मलाई यूसुफको सुगन्धको अनुभव भएको छ, यद्यपि तिमीहरू मलाई एउटा बुद्धिभ्रष्ट व्यक्तिसरह ठान्छौ ।

وَلَمَّا فَصَلَتِ الْعِيْرُ قَالَ اَبُوْهُمْ اِنِّيْ لَاَجِدُ رِيْحَ يُوْسُفَ لَوْلَآ اَنْ تُفَنِّدُوْنِ ﴿٩٤﴾

९६. तिनीहरूले उत्तर दिए, "अल्लाहको शपथ, निस्सन्देह तिमी आफ्नो पुरानै भ्रान्तिमा रहेका छौ ।"

قَالُوْا تَاللّٰهِ اِنَّكَ لَفِيْ ضَلٰلِكَ الْقَدِيْمِ ﴿٩٥﴾

९७. तथा जब शुभ सन्देश बहनकर्ता आयो, उसले त्यो (कमिज) उनीसमक्ष राख्यो तब उनीप्रति सबै भेद खुल्यो । (अनि) उनले भने, "म अल्लाहका तर्फबाट त्यो कुरा जान्दछु, जुनकुरा तिमीहरू जान्दैनौ भनी मैले तिमीहरूलाई भनेको थिइँन र?"

فَلَمَّآ اَنْ جَآءَ الْبَشِيْرُ اَلْقٰىهُ عَلٰى وَجْهِهٖ فَارْتَدَّ بَصِيْرًا ۚ قَالَ اَلَمْ اَقُلْ لَّكُمْ ۚ اِنِّيْٓ اَعْلَمُ مِنَ اللّٰهِ مَا لَا تَعْلَمُوْنَ ﴿٩٦﴾

९८. तिनीहरूले भने, "हे हाम्रा पिता, हाम्रा पापहरूका निम्ति हाम्रा तर्फबाट क्षमायाचना गर, हामीहरू निस्सन्देह पापी थियौं ।

قَالُوْا يٰٓاَبَانَا اسْتَغْفِرْ لَنَا ذُنُوْبَنَآ اِنَّا كُنَّا خٰطِـِٕيْنَ ﴿٩٧﴾

९९. उनले भने, "म अवश्य तिमीहरूका निम्ति आफ्ना अल्लाहसित क्षमायाचना गर्नेछु । निश्चय नै, उनी परम क्षमाशील, परम करुणाशील रहेका छन् ।"

قَالَ سَوْفَ اَسْتَغْفِرُ لَكُمْ رَبِّيْ ۗ اِنَّهٗ هُوَ الْغَفُوْرُ الرَّحِيْمُ ﴿٩٨﴾

१००. तथा जब तिनीहरू यूसुफसमक्ष आए, उनले आफ्ना मातापितालाई आफूसँगै स्थान प्रदान गरे, तथा भने,

فَلَمَّا دَخَلُوْا عَلٰى يُوْسُفَ اٰوٰٓى اِلَيْهِ اَبَوَيْهِ وَقَالَ ادْخُلُوْا مِصْرَ اِنْ شَآءَ اللّٰهُ اٰمِنِيْنَ ﴿٩٩﴾

"अल्लाहको इच्छानुसार शान्तिकासाथ तिमीहरू इजिप्टमा प्रवेश गर ।"

وَرَفَعَ اَبَوَيْهِ عَلَى الْعَرْشِ وَخَرُّوْا لَهٗ سُجَّدًا ۚ وَقَالَ يٰۤاَبَتِ هٰذَا تَاْوِيْلُ رُءْيَايَ مِنْ قَبْلُ ۫ قَدْ جَعَلَهَا رَبِّيْ حَقًّا ۗ وَقَدْ اَحْسَنَ بِيْۤ اِذْ اَخْرَجَنِيْ مِنَ السِّجْنِ وَجَآءَ بِكُمْ مِّنَ الْبَدْوِ مِنْۢ بَعْدِ اَنْ نَّزَغَ الشَّيْطٰنُ بَيْنِيْ وَبَيْنَ اِخْوَتِيْ ۗ اِنَّ رَبِّيْ لَطِيْفٌ لِّمَا يَشَآءُ ۗ اِنَّهٗ هُوَ الْعَلِيْمُ الْحَكِيْمُ ﴿١٠٠﴾

१०१. तथा उनले आफ्ना मातापितालाई सिंहासनमा बसाए, त्यसपछि तिनीहरू (सबै) उनका निम्ति (अल्लाहसमक्ष) दण्डवत गर्न लागे । तथा उनले भने, "हे मेरा पिता, मेरो अतीतको सपनाको पूर्णता (सिद्धि) यही नै हो । मेरा अल्लाहले त्यसलाई सत्य तुल्याएका छन् । तथा म माथि उनले अनुग्रह गरेका छन् । जब उनले मलाई कारागारबाट मुक्त गरी सैतानले म र मेरा भाइहरूका बीच अनमेलको स्थिति खडा गरेपश्चात् (पनि) तिमीहरूलाई मरुभूमिबाट मसम्म ल्याए । निश्चय नै, मेरा अल्लाहले जसलाई चाहन्छन् त्यसप्रति उनी अति उपकार गर्ने गर्छन्; कारण उनी नै सर्वज्ञ तत्त्वज्ञ रहेका छन् ।

رَبِّ قَدْ اٰتَيْتَنِيْ مِنَ الْمُلْكِ وَعَلَّمْتَنِيْ مِنْ تَاْوِيْلِ الْاَحَادِيْثِ ۚ فَاطِرَ السَّمٰوٰتِ وَالْاَرْضِ ۟ اَنْتَ وَلِيّٖ فِي الدُّنْيَا وَالْاٰخِرَةِ ۚ تَوَفَّنِيْ مُسْلِمًا وَّاَلْحِقْنِيْ بِالصّٰلِحِيْنَ ﴿١٠١﴾

१०२. "हे मेरा अल्लाह, तिमीले मलाई शासन कार्यमा भागीदार बनाएर (ममाथि) कृपा गरेका छौ तथा मलाई वस्तुहरूको भावार्थ (गूढार्थ) सिकाएका छौ । हे आकाशमण्डल र पृथ्वीका सिर्जनकर्ता, यस संसार र परलोकमा तिमी नै मेरा संरक्षक रहेका छौ । (तिम्रो इच्छाप्रति) समर्पित रहेको अवस्थामा मलाई मृत्यु प्रदान गर तथा मलाई सत्यनिष्ठ व्यक्तिहरूमा सामेल गर ।"

ذٰلِكَ مِنْ اَنْۢبَآءِ الْغَيْبِ نُوْحِيْهِ اِلَيْكَ ۚ وَمَا كُنْتَ لَدَيْهِمْ اِذْ اَجْمَعُوْۤا اَمْرَهُمْ وَهُمْ يَمْكُرُوْنَ ﴿١٠٢﴾

१०३. यी अदृश्यका खबरहरू हुन् (जुन) हामी तिमीप्रति आकाशवाणी गर्छौं । तथा जब तिनीहरूले परस्पर षड्यन्त्र रचना गरी आफ्नो योजनाप्रति सबै सहमत भएका थिए त्यस समय तिमी तिमीहरूका साथमा थिएनौ ।

१०४. तथा तिमीले जति चाहना राखे तापनि अधिकतर मानिसहरूले भने विश्वास स्थापना गर्नेछैनन् ।

وَمَآ اَكْثَرُ النَّاسِ وَلَوْ حَرَصْتَ بِمُؤْمِنِيْنَ ﴿١٠٣﴾

१०५. तथा यसका निम्ति उनीहरूबाट तिमी कुनै प्रतिदान माग्दैनौ । यो त सम्पूर्ण मानवजातिका निम्ति एउटा उपदेश मात्र हो ।

وَمَا تَسْـَٔلُهُمْ عَلَيْهِ مِنْ اَجْرٍ ۚ اِنْ هُوَ اِلَّا ذِكْرٌ لِّلْعٰلَمِيْنَ ﴿١٠٤﴾

१०६. तथा आकाशमण्डल र पृथ्वीमा कैयौं यस्ता चिह्नहरू रहेका छन्, जसका निकटबाट ती व्यक्तिहरू (जब) आवागमन गर्छन्, तिनीहरूबाट मुख फर्काएर हिँड्ने गर्छन् ।

وَكَاَيِّنْ مِّنْ اٰيَةٍ فِى السَّمٰوٰتِ وَالْاَرْضِ يَمُرُّوْنَ عَلَيْهَا وَهُمْ عَنْهَا مُعْرِضُوْنَ ﴿١٠٥﴾

१०७. तथा तिनीहरूमध्ये अधिकतर व्यक्तिहरू अल्लाहप्रति अविश्वास गर्दैनन्, अपितु (उनका) भागीदार तुल्याउने गर्छन्

وَمَا يُؤْمِنُ اَكْثَرُهُمْ بِاللّٰهِ اِلَّا وَهُمْ مُّشْرِكُوْنَ ﴿١٠٦﴾

१०८. त्यसो भए, के तिनीहरू अल्लाहका तर्फबाट तिनीहरूमाथि आइपर्ने कठोर दण्डबाट अथवा तिनीहरू असावधान रहेका अवस्थामै तिनीहरूमाथि अकस्मात् आउने घडीबाट सुरक्षित रहेका छन् भनी ठान्छन्?

اَفَاَمِنُوْٓا اَنْ تَاْتِيَهُمْ غَاشِيَةٌ مِّنْ عَذَابِ اللّٰهِ اَوْ تَاْتِيَهُمُ السَّاعَةُ بَغْتَةً وَّهُمْ لَا يَشْعُرُوْنَ ﴿١٠٧﴾

१०९. तिमी भन, "यही मेरो मार्ग हो; म अल्लाहतर्फ आह्वान गर्छु । मलाई स्पष्ट ज्ञानको एउटा विशेष स्थान प्राप्त छ । त्यसैगरी मेरो अनुसरण गर्ने व्यक्तिहरूलाई पनि । तथा अल्लाह पवित्र छन्, तथा म तिनीहरूमध्ये छैन जसले (अल्लाहका साथ) भागीदार तुल्याउने गर्छन् ।"

قُلْ هٰذِهٖ سَبِيْلِيْٓ اَدْعُوْٓا اِلَى اللّٰهِ ۚ عَلٰى بَصِيْرَةٍ اَنَا وَمَنِ اتَّبَعَنِيْ ۚ وَسُبْحٰنَ اللّٰهِ وَمَآ اَنَا مِنَ الْمُشْرِكِيْنَ ﴿١٠٨﴾

११०. तथा तिमीभन्दा अघि हामीले केवल पुरुषहरूलाई नै (सन्देशवाहकहरू स्वरूप) पठायौं, नगरहरूका निवासीहरूमध्ये हामीले तिनीहरूप्रति

وَمَآ اَرْسَلْنَا مِنْ قَبْلِكَ اِلَّا رِجَالًا نُّوْحِيْٓ اِلَيْهِمْ مِّنْ اَهْلِ الْقُرٰى ۗ اَفَلَمْ يَسِيْرُوْا فِى الْاَرْضِ فَيَنْظُرُوْا كَيْفَ كَانَ عَاقِبَةُ

الَّذِيْنَ مِنْ قَبْلِهِمْ ۗ وَلَدَارُ الْاٰخِرَةِ خَيْرٌ لِّلَّذِيْنَ اتَّقَوْا ۗ اَفَلَا تَعْقِلُوْنَ ﴿١١٠﴾

आकाशवाणी गऱ्यौं । त्यसो भए के "तिनीहरूले पृथ्वीमा घुमफिर गरी तिनीहरूभन्दा अघिका व्यक्तिहरूको अन्त्य कस्तो भएको थियो भन्ने कुरा देखेका छैनन् त? तथा निश्चय नै, परलोकको निवास तिनीहरूकै निम्ति उत्तम रहेको छ जसले अल्लाहको डर धारण गर्छन् । अतः के तिमीहरू बुझ्दैनौ त?

حَتّٰٓى اِذَا اسْتَيْـَٔسَ الرُّسُلُ وَظَنُّوْٓا اَنَّهُمْ قَدْ كُذِبُوْا جَآءَهُمْ نَصْرُنَا ۙ فَنُجِّيَ مَنْ نَّشَآءُ ۗ وَلَا يُرَدُّ بَأْسُنَا عَنِ الْقَوْمِ الْمُجْرِمِيْنَ ﴿١١١﴾

१११. त्यस समय, जब सन्देशवाहकहरू निराश भए तथा तिनीहरूले आफूहरूलाई मिथ्यावादी स्वरूप तुल्याइएको छ भनी ठाने (तब) अकस्मात हाम्रो सहयोग तिनीहरूसमक्ष आयो, त्यसपछि जसलाई हामी चाहन्थ्यौं त्यसलाई रक्षा गरियो । तथा पापी व्यक्तिहरूबाट हाम्रो दण्ड हटाउन सकिदैन ।

لَقَدْ كَانَ فِيْ قَصَصِهِمْ عِبْرَةٌ لِّاُولِي الْاَلْبَابِ ۗ مَا كَانَ حَدِيْثًا يُّفْتَرٰى وَلٰكِنْ تَصْدِيْقَ الَّذِيْ بَيْنَ يَدَيْهِ وَتَفْصِيْلَ كُلِّ شَيْءٍ وَّهُدًى وَّرَحْمَةً لِّقَوْمٍ يُّؤْمِنُوْنَ ﴿١١١﴾

१२. निश्चयपूर्वक, तिनीहरूको वृत्तान्तमा बुद्धिमान व्यक्तिहरूका निम्ति एउटा शिक्षा रहेको छ । यो कुनै गढेको कुरो होइन, अपितु यो यसअघि रहेका (कुरा)लाई पूर्ण गर्ने तथा सम्पूर्ण वस्तुहरूको पूर्ण विवरण प्रदान गर्ने, तथा विश्वासीजनहरूका निम्ति मार्गदर्शन र करुणास्वरूप रहेको छ ।

سُوْرَةُ الرَّعْدِ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ اَرْبَعٌ وَّاَرْبَعُوْنَ اٰيَةً وَّسِتَّةُ رُكُوْعَاتٍ

## अल-रा'द
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ۝١

१. परम कृपालु, परम दयालु अल्लाहको नाममा ।

الٓمّٓرٰ ۚ تِلْكَ اٰيٰتُ الْكِتٰبِ ؕ وَالَّذِيْٓ اُنْزِلَ اِلَيْكَ مِنْ رَّبِّكَ الْحَقُّ وَلٰكِنَّ اَكْثَرَ النَّاسِ لَا يُؤْمِنُوْنَ ۝٢

२. अलिफ्-लाम-मिम रा* । यी पुस्तकका आयातहरू हुन् । तथा जुन कुरा तिमीप्रति तिम्रा पालनहारका तर्फबाट अवतीर्ण गरिएको छ त्यो कुरा सत्य रहेको छ, परन्तु अधिकतर मानिसहरू विश्वास गर्दैनन् ।

اَللّٰهُ الَّذِيْ رَفَعَ السَّمٰوٰتِ بِغَيْرِ عَمَدٍ تَرَوْنَهَا ثُمَّ اسْتَوٰى عَلَى الْعَرْشِ وَسَخَّرَ الشَّمْسَ وَالْقَمَرَ ؕ كُلٌّ يَّجْرِيْ لِاَجَلٍ مُّسَمًّى ؕ يُدَبِّرُ الْاَمْرَ يُفَصِّلُ الْاٰيٰتِ لَعَلَّكُمْ بِلِقَآءِ رَبِّكُمْ تُوْقِنُوْنَ ۝٣

३. अल्लाह तिनै हुन् जसले बिना कुनै स्तम्भ आकाशमण्डललाई उठाएर राखेका छन् जो तिमीहरू देख्न सक्छौ । त्यसपछि उनी स्वयम् सिंहासनमाथि प्रतिष्ठित भए । तथा उनले सूर्य र चन्द्रमालाई सेवामा खटाए : ती प्रत्येक एउटा निर्धारित म्यादसम्म आफ्नो परिधिअन्तर्गत गतिशील छन् । यी सबैलाई उनले नै संचालन गरिरहेछन् । तिमीहरूले आफ्ना पालनहारसित हुने साक्षात्कारप्रति पूर्ण विशवास राख्नेछौ भनी उनले आफ्ना निर्देशनहरू स्पष्टरूपमा वर्णन गर्ने गर्छन्

وَهُوَ الَّذِيْ مَدَّ الْاَرْضَ وَجَعَلَ فِيْهَا رَوَاسِيَ وَاَنْهٰرًا ؕ وَمِنْ كُلِّ الثَّمَرٰتِ جَعَلَ فِيْهَا زَوْجَيْنِ اثْنَيْنِ يُغْشِي الَّيْلَ النَّهَارَ ؕ اِنَّ فِيْ ذٰلِكَ لَاٰيٰتٍ لِّقَوْمٍ يَّتَفَكَّرُوْنَ ۝٤

४. तथा उनी नै हुन् जसले पृथ्वीलाई विस्तृत तुल्याएका छन् तथा त्यसमा पहाडहरू र नदीहरूको सिर्जना गरेका छन् । तथा फलहरूमध्ये (पनि) उनले तिनीहरूलाई दुई दुई जोडी बनाए । उनले रात्रीलाई दिनको ओढ्नेस्वरूप बनाएका छन् । चिन्तन-मनन गर्ने

* म सर्वज्ञ, सर्वद्रष्टा अल्लाह हुँ ।

व्यक्तिहरूका निम्ति यिनै कुरामा निस्सन्देह चिह्नहरू रहेका छन् ।

५. तथा पृथ्वीमा एक अर्कासित जोडिएका (विभिन्न प्रकारका भूखण्डहरू छन्, तथा त्यसमा अङ्गुरका बगैंचाहरू, तथा अन्नका खेतहरू, र एउटा जरोबाट एकाधिक टुसा निकाल्ने तथा (अन्य) एउटा जरोबाट अधिक टुसा ननिकाल्ने खजुरका वृक्षहरू रहेका छन्, यी सबैलाई एकै प्रकारको पानीले सिँचाइ गरिन्छ, तथापि तिनीहरूमध्ये केहीलाई हामीले फलको आधारमा, अन्य केहीमाथि श्रेष्ठता प्रदान गरेका छौं । बुद्धिमान व्यक्तिहरूका निम्ति यसमा चिह्नहरू रहेका छन् ।

وَفِي الْأَرْضِ قِطَعٌ مُّتَجٰوِرٰتٌ وَّجَنّٰتٌ مِّنْ أَعْنَابٍ وَّزَرْعٌ وَّنَخِيْلٌ صِنْوَانٌ وَّغَيْرُ صِنْوَانٍ يُّسْقٰى بِمَآءٍ وَّاحِدٍ وَنُفَضِّلُ بَعْضَهَا عَلٰى بَعْضٍ فِي الْأُكُلِ ۚ إِنَّ فِيْ ذٰلِكَ لَاٰيٰتٍ لِّقَوْمٍ يَّعْقِلُوْنَ ④

६. तथा यदि तिमीलाई आश्चर्य लाग्छ भने, तिनीहरूको यो भनाई अर्थात् "के ! जब हामी मरेर धूलो माटो बन्नेछौं, तब के हामीले कुनै नयाँ सृष्टिको (रूप धार्नु) पर्नेछ त?" निश्चय नै (झन्) आश्चर्यपूर्ण रहेको छ । ती उनीहरू नै हुन् जसले आफ्ना पालनहारप्रति अविश्वास गर्छन्, तथा तिनीहरू नै हुन् जसका गर्धनमा सिक्रीको बन्धन पर्नेछ, तथा तिनीहरू अगिनका निवासी हुनेछन्, जहाँ तिनीहरू बसोबास गर्नेछन् ।

وَإِنْ تَعْجَبْ فَعَجَبٌ قَوْلُهُمْ ءَإِذَا كُنَّا تُرٰبًا ءَإِنَّا لَفِيْ خَلْقٍ جَدِيْدٍ ۚ أُولٰٓئِكَ الَّذِيْنَ كَفَرُوْا بِرَبِّهِمْ ۚ وَأُولٰٓئِكَ الْأَغْلٰلُ فِيْٓ أَعْنَاقِهِمْ ۚ وَأُولٰٓئِكَ أَصْحٰبُ النَّارِ ۚ هُمْ فِيْهَا خٰلِدُوْنَ ⑤

७. तथा तिनीहरूसमक्ष तिमीले मङ्गलका स्थानमा दण्ड नै प्रस्तुत गर भन्ने माग राख्न तिनीहरू उत्सुक छन्, वस्तुतः तिनीहरूभन्दा अघि नै दृष्टान्तयोग्य दण्डहरूको आगमन भइसकेको छ । तथा तिनीहरूको अन्यायपूर्ण व्यवहार विपरित तिम्रा पालनहार निस्सन्देह मानवजातिप्रति पूर्ण क्षमाशील छन्, तथा निस्सन्देह तिम्रा पालनहार दण्ड दिनमा (पनि) कठोर

وَيَسْتَعْجِلُوْنَكَ بِالسَّيِّئَةِ قَبْلَ الْحَسَنَةِ وَقَدْ خَلَتْ مِنْ قَبْلِهِمُ الْمَثُلٰتُ ۚ وَإِنَّ رَبَّكَ لَذُوْ مَغْفِرَةٍ لِّلنَّاسِ عَلٰى ظُلْمِهِمْ ۚ وَإِنَّ رَبَّكَ لَشَدِيْدُ الْعِقَابِ ⑥

रहेका छन् ।

८. तथा अविश्वासी व्यक्तिहरू भन्छन्, "उसका पालनहारका तर्फबाट उसमाथि कुनै चिह्न किन अवतीर्ण गरिएन?" तिमी निश्चयपूर्वक एकजना सचेतक हौ । तथा हरेक जातिका निम्ति एकजना मार्गदर्शक रहेका छन् ।

وَيَقُولُ الَّذِينَ كَفَرُوا لَوْلَا أُنزِلَ عَلَيْهِ آيَةٌ مِّن رَّبِّهِ ۗ إِنَّمَا أَنتَ مُنذِرٌ ۖ وَلِكُلِّ قَوْمٍ هَادٍ ﴿٨﴾

९. हरेक स्त्री जातिले जुनकुरा बहन गर्छे र गर्भाशयले जुन कुरा घटाउँछ र जुनकुरा बढाउने गर्छ अल्लाह (यी कुराहरूलाई) जान्दछन् । तथा प्रत्येक वस्तु उनीसित (उचित परिमाणमा) मौजुद रहेको छ ।

اللَّهُ يَعْلَمُ مَا تَحْمِلُ كُلُّ أُنثَىٰ وَمَا تَغِيضُ الْأَرْحَامُ وَمَا تَزْدَادُ ۖ وَكُلُّ شَيْءٍ عِندَهُ بِمِقْدَارٍ ﴿٩﴾

१०. (उनी) अदृश्य र दृश्य कुराहरूका ज्ञाता, अतुलनीय महान, परम प्रतिष्ठावान रहेका छन् ।

عَالِمُ الْغَيْبِ وَالشَّهَادَةِ الْكَبِيرُ الْمُتَعَالِ ﴿١٠﴾

११. तिमीहरूमध्ये त्यो व्यक्ति जसले (आफ्नो) कुरा लुकाउँछ, तथा त्यो व्यक्ति जसले त्यसलाई प्रकट गर्छ, तथा त्यो व्यक्ति (पनि) जुन रात्रि समयमा लुक्ने गर्छ, तथा त्यो व्यक्ति जुन दिउँसोको समयमा (खुल्ला) घुम्ने गर्छ, (उनका दृष्टिमा) सबै एकसमान रहेका छन् ।

سَوَاءٌ مِّنكُم مَّنْ أَسَرَّ الْقَوْلَ وَمَن جَهَرَ بِهِ وَمَنْ هُوَ مُسْتَخْفٍ بِاللَّيْلِ وَسَارِبٌ بِالنَّهَارِ ﴿١١﴾

१२. उनका (सन्देहवाहकका) निम्ति फरिस्ताहरूको क्रमबद्ध (जमात) रहेको छ जसले उनका अगाडि र उनका पछाडि रही अल्लाहको आदेशानुसार उनको सुरक्षा गर्ने गर्छन् । निश्चय नै, अल्लाहले कुनै जातिको अवस्था तबसम्म परिवर्तन गर्दैनन् जबसम्म तिनीहरूले आफ्नो

لَهُ مُعَقِّبَاتٌ مِّن بَيْنِ يَدَيْهِ وَمِنْ خَلْفِهِ يَحْفَظُونَهُ مِنْ أَمْرِ اللَّهِ ۗ إِنَّ اللَّهَ لَا يُغَيِّرُ مَا بِقَوْمٍ حَتَّىٰ يُغَيِّرُوا مَا بِأَنفُسِهِمْ ۗ وَإِذَا أَرَادَ اللَّهُ بِقَوْمٍ سُوءًا فَلَا مَرَدَّ لَهُ ۚ وَمَا لَهُم مِّن دُونِهِ مِن وَالٍ ﴿١٢﴾

हृदयमा रहेका कुराहरूलाई परिवर्तन गर्दैनन् । तथा जब अल्लाहले कुनै जातिलाई दण्ड दिन चाहन्छन् त्यसलाई कसैले निवारण गर्न सक्दैन, न उनीबाहेक तिनीहरूको कोही सहयोगी नै बन्न सक्छ

१३. ती उनी नै हुन जसले तिमीहरूमा डर र आशा (जगाउनका निम्ति) बिजुली देखाउँछन्, तथा उनले नै गहन बादलहरूलाई उठाउने गर्छन् ।

هُوَ الَّذِيْ يُرِيْكُمُ الْبَرْقَ خَوْفًا وَّ طَمَعًا وَّ يُنْشِئُ السَّحَابَ الثِّقَالَ ۝١٢

१४. तथा चट्याङले उनको प्रशंसाका साथ उनको पवित्रताको वर्णन गर्छ तथा फरिस्ताहरूले (पनि) उनका डरले गर्दा (त्यसै गर्ने गर्छन्); तथा उनले नै चट्याङ पठाउने गर्छन् र जसलाई चाहन्छन् त्यसद्वारा प्रहार गर्छन्, तथापि तिनीहरू अल्लाहका सम्बन्धमा विवाद गर्ने गर्छन् । वस्तुतः उनी दण्ड दिने काममा कठोर रहेका छन् ।

وَيُسَبِّحُ الرَّعْدُ بِحَمْدِهٖ وَالْمَلٰٓئِكَةُ مِنْ خِيْفَتِهٖ ۚ وَيُرْسِلُ الصَّوَاعِقَ فَيُصِيْبُ بِهَا مَنْ يَّشَآءُ وَهُمْ يُجَادِلُوْنَ فِي اللّٰهِ ۚ وَهُوَ شَدِيْدُ الْمِحَالِ ۝١٣

१५. साँचो प्रार्थना केवल उनकै गरिन्छ । तथा उनीबाहेक जसलाई तिनीहरूले पुकार्छन् कदापि तिनीहरूलाई उत्तर दिदैनन्, सिवाय त्यस व्यक्ति (लाई प्राप्त उत्तर) सदृश जसले आफ्ना दुबै हात पानीतर्फ फैलाउँछ ताकि त्यो उसका मुखमा पुगोस् परन्तु त्यो त्यहाँ पुग्दैन । तथा अविश्वासी व्यक्तिहरूको प्रार्थना केवल एउटा खेर गएको वस्तुस्वरूप रहेको छ ।

لَهٗ دَعْوَةُ الْحَقِّ ۗ وَالَّذِيْنَ يَدْعُوْنَ مِنْ دُوْنِهٖ لَا يَسْتَجِيْبُوْنَ لَهُمْ بِشَيْءٍ اِلَّا كَبَاسِطِ كَفَّيْهِ اِلَى الْمَآءِ لِيَبْلُغَ فَاهُ وَمَا هُوَ بِبَالِغِهٖ ۗ وَمَا دُعَآءُ الْكٰفِرِيْنَ اِلَّا فِيْ ضَلٰلٍ ۝١٤

१६. तथा आकाशमण्डल र पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरूले बिहानी र बेलुकी इच्छापूर्वक अथवा अनिच्छापूर्वक अल्लाहलाई नै साष्टाङ्ग प्रणाम गर्ने गर्छन्

وَلِلّٰهِ يَسْجُدُ مَنْ فِي السَّمٰوٰتِ وَالْاَرْضِ طَوْعًا وَّكَرْهًا وَّظِلٰلُهُمْ بِالْغُدُوِّ وَالْاٰصَالِ ۩ ۝١٥

। त्यसैगरी तिनीहरूका छायाँहरूले (पनि),

१७. तिमी भन, "आकाशमण्डल र पृथ्वीका पालनहार को हुन्?" भन, "अल्लाह" । तिमी भन,"त्यसोभए के तिमीहरूले उनलाई छाडी यस्ता सहयोगी तुल्याएका छौ त जसले न आफ्नै मङ्गल गर्न सक्छन् न त आफ्नो हानि नै?" तिमी भन, "के नेत्रहीन र देख्नसक्ने एकसमान हुन सक्छ र? अथवा, के अन्धकार प्रकाश समान हुन सक्छ र? अथवा, के तिनीहरूले अल्लाहका यस्ता भागीदार बनाएका छन् जसले उनको सृष्टिझैं सृष्टिको सिर्जना गरेका छन्, जसले गर्दा (दुबै प्रकारका) सृष्टिहरू तिनीहरूका (दृष्टिमा) एकैजस्ता देखिन पुगे?" तिमी भन, "सम्पूर्ण वस्तुहरूका सृष्टिकर्ता अल्लाह हुन्, तथा उनी अद्वितीय, परम पराक्रमी छन् ।

قُلْ مَنْ رَّبُّ السَّمٰوٰتِ وَالْاَرْضِ ۚ قُلِ اللّٰهُ ۚ قُلْ اَفَاتَّخَذْتُمْ مِّنْ دُوْنِهٖٓ اَوْلِيَآءَ لَا يَمْلِكُوْنَ لِاَنْفُسِهِمْ نَفْعًا وَّلَا ضَرًّا ۚ قُلْ هَلْ يَسْتَوِى الْاَعْمٰى وَالْبَصِيْرُ ۙ اَمْ هَلْ تَسْتَوِى الظُّلُمٰتُ وَالنُّوْرُ ۚ اَمْ جَعَلُوْا لِلّٰهِ شُرَكَآءَ خَلَقُوْا كَخَلْقِهٖ فَتَشَابَهَ الْخَلْقُ عَلَيْهِمْ ۚ قُلِ اللّٰهُ خَالِقُ كُلِّ شَيْءٍ وَّهُوَ الْوَاحِدُ الْقَهَّارُ ﴿١٧﴾

१८. उनी आकाशबाट पानी बर्साउँछन्, जसबाट उपत्यका(का प्रवाहहरू) आफ्नो मापदण्डअनुसार बग्न लाग्छन्, तथा त्यस बाढीले फुलेका फींजहरू (आफ्नो सतहमाथि) उठाएर बगाउँछ । तथा जुन वस्तुलाई तिनीहरू गहना अथवा भाँडा-बर्तन (बनाउन) आगोमा पगाल्छन्, त्यसबाट पनि एउटा त्यस्तै प्रकारको फींज (निस्कन्छ) । यसै प्रकार अल्लाहले सत्य र असत्यको उपमा दिन्छन् । अतः, त्यो फींज भने फोहोरसरह फ्याँकिन जान्छ, परन्तु जुन वस्तु मानिसहरूका निम्ति लाभदायक हुन्छ त्यो भने पृथ्वीमा बाँकी रहन्छ । यसैप्रकार अल्लाहले उपमाहरू प्रस्तुत गर्ने गर्छन् ।

اَنْزَلَ مِنَ السَّمَآءِ مَآءً فَسَالَتْ اَوْدِيَةٌ ۢ بِقَدَرِهَا فَاحْتَمَلَ السَّيْلُ زَبَدًا رَّابِيًا ۚ وَمِمَّا يُوْقِدُوْنَ عَلَيْهِ فِى النَّارِ ابْتِغَآءَ حِلْيَةٍ اَوْ مَتَاعٍ زَبَدٌ مِّثْلُهٗ ۚ كَذٰلِكَ يَضْرِبُ اللّٰهُ الْحَقَّ وَالْبَاطِلَ ۚ فَاَمَّا الزَّبَدُ فَيَذْهَبُ جُفَآءً ۚ وَاَمَّا مَا يَنْفَعُ النَّاسَ فَيَمْكُثُ فِى الْاَرْضِ ۚ كَذٰلِكَ يَضْرِبُ اللّٰهُ الْاَمْثَالَ ﴿١٨﴾

१९. जुन व्यक्तिहरू आफ्ना पालनहारको

لِلَّذِيْنَ اسْتَجَابُوْا لِرَبِّهِمُ الْحُسْنٰى ۗ وَالَّذِيْنَ لَمْ يَسْتَجِيْبُوْا لَهٗ لَوْ اَنَّ لَهُمْ

مَّا فِي الْأَرْضِ جَمِيعًا وَّمِثْلَهُ مَعَهُ لَافْتَدَوْا بِهِ ۚ أُولَٰئِكَ لَهُمْ سُوءُ الْحِسَابِ ۙ وَمَأْوَاهُمْ جَهَنَّمُ ۖ وَبِئْسَ الْمِهَادُ ﴿١٩﴾

उत्तर दिन्छन् तिनीहरूलाई भने अनन्त मङ्गल प्राप्त हुन्छ; तथा जुन व्यक्तिहरूले उनको उत्तर दिँदैनन्, (तिनीहरू त) यदि तिनीहरूलाई पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरू र थप त्यति नै प्राप्त भएको भए, (तत्काल) त्यो सबै तिरेर स्वयम्लाई छुटाउन (तयार) हुने थिए । तिनीहरू नै हुन् जसलाई निकृष्ट हिसाब प्राप्त हुनेछ, तथा तिनीहरूको निवासस्थान नर्क रहेको छ । विश्रामका निम्ति त्यो कति निकृष्ट स्थान हो !

أَفَمَن يَعْلَمُ أَنَّمَا أُنزِلَ إِلَيْكَ مِن رَّبِّكَ الْحَقُّ كَمَنْ هُوَ أَعْمَىٰ ۚ إِنَّمَا يَتَذَكَّرُ أُولُو الْأَلْبَابِ ﴿٢٠﴾

२०. जुन व्यक्तिले तिम्रा पालनहारका तर्फबाट तिमीप्रति जुन कुरा अवतीर्ण गरिएको छ, त्यो सत्य हो भनी जान्दछ के त्यो व्यक्ति एउटा अन्धो व्यक्तिसरह हुन सक्छ र? (परन्तु) विवेकप्राप्त व्यक्तिहरूले मात्र अर्ती लिन सक्नेछन् :

الَّذِينَ يُوفُونَ بِعَهْدِ اللَّهِ وَلَا يَنقُضُونَ الْمِيثَاقَ ﴿٢١﴾

२१. ती व्यक्तिहरू जसले अल्लाहसित (गरेको) अङ्गीकारलाई पूर्ण गर्छन्, तथा संविदा (अङ्गीकार) भङ्ग गर्दैनन्;

وَالَّذِينَ يَصِلُونَ مَا أَمَرَ اللَّهُ بِهِ أَن يُوصَلَ وَيَخْشَوْنَ رَبَّهُمْ وَيَخَافُونَ سُوءَ الْحِسَابِ ﴿٢٢﴾

२२. तथा ती व्यक्तिहरू जसले ती (सम्बन्धहरूलाई) स्थापना गर्छन् जसलाई अल्लाहले जोड्ने आदेश दिएका छन्, तथा आफ्ना पालनहारभित डराउँछन्, र निकृष्ट हिसाबप्रति भयातुर रहन्छन्;

وَالَّذِينَ صَبَرُوا ابْتِغَاءَ وَجْهِ رَبِّهِمْ وَأَقَامُوا الصَّلَاةَ وَأَنفَقُوا مِمَّا رَزَقْنَاهُمْ سِرًّا وَعَلَانِيَةً وَيَدْرَءُونَ بِالْحَسَنَةِ السَّيِّئَةَ أُولَٰئِكَ لَهُمْ عُقْبَى الدَّارِ ﴿٢٣﴾

२३. तथा ती व्यक्तिहरू जसले आफ्ना पालनहारको इच्छा प्राप्तिका निम्ति धैर्यधारण गर्ने गर्छन्, तथा नमाज अनुष्ठान गर्छन् तथा जुन कुरा हामीले तिनीहरूलाई प्रदान गरेका छौं त्यसबाट गुप्तरूपमा र प्रकाश्यरूपमा खर्च गर्ने गर्छन् र पुण्यकार्यद्वारा अवगुणहरूलाई मेटाउने गर्छन् । तिनीहरू नै हुन् जसलाई (अन्तिम) वासको सर्वोत्तम प्रतिदान प्राप्त

हुनेछ–

२४. अनन्त रहने बगैँचाहरूमा तिनीहरू प्रवेश गर्नेछन् तथा तिनीहरूका पिताहरू, र तिनीहरूका पत्नीहरू तथा तिनीहरूका सन्तानहरूमध्येबाट (पनि) ती व्यक्तिहरू जुन सत्यनिष्ठ रहेका छन् । तथा फरिस्ताहरू हरेक ढोकाबाट (के भन्दै) तिनीहरूसमक्ष प्रवेश गर्नेछन् (भने);

جَنّٰتُ عَدْنٍ يَّدْخُلُوْنَهَا وَمَنْ صَلَحَ مِنْ اٰبَآئِهِمْ وَاَزْوَاجِهِمْ وَذُرِّيّٰتِهِمْ وَالْمَلٰٓئِكَةُ يَدْخُلُوْنَ عَلَيْهِمْ مِّنْ كُلِّ بَابٍ ﴿٢٣﴾

२५. "तिमीहरूप्रति शान्ति वर्षण होस्, किनभने तिमीहरू धैर्यधारी थियौ; सुन, अन्तिम गृहको प्रतिदान कति नै उत्कृष्ट रहेको छ !"

سَلٰمٌ عَلَيْكُمْ بِمَا صَبَرْتُمْ فَنِعْمَ عُقْبَى الدَّارِ ﴿٢٤﴾

२६. तथा ती व्यक्तिहरू जसले अल्लाहसित (गरेको) संविदालाई त्यसको दृढतापश्चात् तोड्छन् र जुन सम्बन्धलाई अल्लाहले जोड्ने आदेश दिएका छन् त्यसलाई काटेर फ्याँक्छन् तथा पृथ्वीमा भ्रष्टाचार फैलाउँछन्– तिनीहरूमाथि अभिशाप रहेको छ तथा तिनीहरूलाई दुखदायक वासस्थान प्राप्त हुनेछ ।

وَالَّذِيْنَ يَنْقُضُوْنَ عَهْدَ اللّٰهِ مِنْۢ بَعْدِ مِيْثَاقِهٖ وَيَقْطَعُوْنَ مَآ اَمَرَ اللّٰهُ بِهٖٓ اَنْ يُّوْصَلَ وَيُفْسِدُوْنَ فِى الْاَرْضِ اُولٰٓئِكَ لَهُمُ اللَّعْنَةُ وَلَهُمْ سُوْٓءُ الدَّارِ ﴿٢٥﴾

२७. अल्लाहले जसलाई इच्छा गर्छन् आफ्नो जीविका त्यसका निम्ति बढाउँछन् । तथा जसका निम्ति चाहन्छन् त्यसलाई सङ्कीर्ण तुल्याउँछन् । तथा तिनीहरू यस सांसारिक जीवनप्रति नै प्रसन्न रहने गर्छन्, वस्तुतः यो सांसारिक जीवन पछि आउने जीवनको तुलनामा केवल एउटा अस्थायी सुख मात्र हो ।

اَللّٰهُ يَبْسُطُ الرِّزْقَ لِمَنْ يَّشَآءُ وَيَقْدِرُ ۚ وَفَرِحُوْا بِالْحَيٰوةِ الدُّنْيَا ۚ وَمَا الْحَيٰوةُ الدُّنْيَا فِى الْاٰخِرَةِ اِلَّا مَتَاعٌ ﴿٢٦﴾

२८. तथा अविश्वासी व्यक्तिहरू के भन्छन् भने, "उसमाथि उसका पालनहारका तर्फबाट किन कुनै चिह्न अवतीर्ण गरिएन?" तिमी भन, "अल्लाहले जसलाई इच्छा गर्छन् तिनीहरूलाई पथभ्रष्ट हुन

وَيَقُوْلُ الَّذِيْنَ كَفَرُوْا لَوْلَآ اُنْزِلَ عَلَيْهِ اٰيَةٌ مِّنْ رَّبِّهٖ ۗ قُلْ اِنَّ اللّٰهَ يُضِلُّ مَنْ يَّشَآءُ وَيَهْدِيْٓ اِلَيْهِ مَنْ اَنَابَ ﴿٢٧﴾

दिन्छन् तथा जसले उनीतर्फ ध्यान केन्द्रित गर्छन् तिनीहरूलाई आफूतर्फको मार्ग देखाउँछन् ।

اَلَّذِيْنَ اٰمَنُوْا وَتَطْمَئِنُّ قُلُوْبُهُمْ بِذِكْرِ اللّٰهِ ؕ اَلَا بِذِكْرِ اللّٰهِ تَطْمَئِنُّ الْقُلُوْبُ ﴿٢٩﴾

२९. "जुन व्यक्तिहरूले विश्वास गर्छन् तथा जसको हृदयले अल्लाहको स्मरणबाट शान्ति प्राप्त गर्छ । सुन ! अल्लाहको स्मरणबाट नै हृदयलाई शान्ति प्राप्त हुन सक्छ;

اَلَّذِيْنَ اٰمَنُوْا وَ عَمِلُوا الصّٰلِحٰتِ طُوْبٰى لَهُمْ وَحُسْنُ مَاٰبٍ ﴿٣٠﴾

३०. "ती व्यक्तिहरू जसले विश्वास गर्छन् तथा पुण्यकार्य गर्छन्– तिनीहरूका निम्ति आनन्दै आनन्द तथा फर्किनको लागि उत्कृष्ट स्थान रहेको छ ।"

كَذٰلِكَ اَرْسَلْنٰكَ فِيْٓ اُمَّةٍ قَدْ خَلَتْ مِنْ قَبْلِهَآ اُمَمٌ لِّتَتْلُوَا۟ عَلَيْهِمُ الَّذِيْٓ اَوْحَيْنَآ اِلَيْكَ وَهُمْ يَكْفُرُوْنَ بِالرَّحْمٰنِ ؕ قُلْ هُوَ رَبِّيْ لَآ اِلٰهَ اِلَّا هُوَ ۚ عَلَيْهِ تَوَكَّلْتُ وَاِلَيْهِ مَتَابِ ﴿٣١﴾

३१. यसैप्रकार हामीले तिमीलाई यस्तो जातितर्फ पठाएका छौं जसअघि अन्य कतिपय जातिहरू व्यतीत भइसकेका छन्, ताकि तिमी तिनीहरूसमक्ष हामीले तिमीप्रति जुन कुरा अवतीर्ण गरेका छौं त्यसलाई पाठ गरेर सुनाऊ, तथापि तिनीहरू परम कृपालु अल्लाह(प्रति) अविश्वास गरिरहेछन् । तिमी भन, "उनी मेरा पालनहार हुन्; उनीबाहेक अन्य कोही उपास्य छैन । उनीमाथि नै म आफ्नो भरोसा राख्ने गर्छु तथा उनीतर्फ नै मैले फर्कनु छ ।

وَلَوْ اَنَّ قُرْاٰنًا سُيِّرَتْ بِهِ الْجِبَالُ اَوْ قُطِّعَتْ بِهِ الْاَرْضُ اَوْ كُلِّمَ بِهِ الْمَوْتٰى ؕ بَلْ لِّلّٰهِ الْاَمْرُ جَمِيْعًا ؕ اَفَلَمْ يَايْــَٔسِ الَّذِيْنَ اٰمَنُوْٓا اَنْ لَّوْ يَشَآءُ اللّٰهُ لَهَدَى النَّاسَ جَمِيْعًا ؕ وَلَا يَزَالُ الَّذِيْنَ كَفَرُوْا تُصِيْبُهُمْ بِمَا صَنَعُوْا قَارِعَةٌ اَوْ تَحُلُّ قَرِيْبًا مِّنْ دَارِهِمْ حَتّٰى يَاْتِيَ

३२. तथा यदि कुनै यस्तो कुरान रहेको भए जसद्वारा पहाडहरूलाई चलाउन सकियोस् अथवा जसद्वारा पृथ्वीलाई टुक्रा पार्न सकियोस् अथवा जसद्वारा मुर्दाहरूसित वार्ता गर्न सकियोस् (तथापि तिनीहरूले त्यसप्रति विश्वास स्थापना गर्नेछैनन्) । होइन, अपितु यो मामिला त पूर्णरूपमा अल्लाहको हातमा रहेको छ । यदि अल्लाहले आफ्नो इच्छा (बलपूर्वक) लागु गरेका भए, उनले

وَعْدُ اللّٰهِ ۚ إِنَّ اللّٰهَ لَا يُخْلِفُ الْمِيعَادَ ﴿٣١﴾

सम्पूर्ण मानवजातिलाई मार्ग देखाउन सक्नेथिए भन्ने कुरा अहिलेसम्म विश्वासीहरूलाई ज्ञात भएको छैन र? तथा जसले अविश्वास गर्छन् तिनीहरूका सम्बन्धमा भने तिनीहरूका कमाइका कारण तिनीहरूमाथि सङ्कट आउन छाड्नेछैन अथवा तिनीहरूका घर छेउछाउमा अवतीर्ण भइरहनेछ, त्यसैक्रममा अल्लाहको प्रतिवचन पूर्ण हुनेछ । निश्चय नै, अल्लाह (आफ्नो) वचन (पूर्ण गर्न)बाट चुक्दैनन् ।

وَلَقَدِ اسْتُهْزِئَ بِرُسُلٍ مِّنْ قَبْلِكَ فَأَمْلَيْتُ لِلَّذِينَ كَفَرُوا ثُمَّ أَخَذْتُهُمْ ۖ فَكَيْفَ كَانَ عِقَابِ ﴿٣٢﴾

३३. तथा निश्चय नै तिमीभन्दा पहिला अन्य सन्देशवाहकहरूलाई ठट्टामा उडाइएको थियो; परन्तु मैले अविश्वासी व्यक्तिहरूलाई केही अवसर प्रदान गरें । त्यसपछि मैले तिनीहरूलाई समातें, अतः मेरो दण्ड कस्तो थियो त !

أَفَمَنْ هُوَ قَائِمٌ عَلَىٰ كُلِّ نَفْسٍ بِمَا كَسَبَتْ ۗ وَجَعَلُوا لِلّٰهِ شُرَكَاءَ قُلْ سَمُّوهُمْ ۚ أَمْ تُنَبِّئُونَهُ بِمَا لَا يَعْلَمُ فِي الْأَرْضِ أَمْ بِظَاهِرٍ مِّنَ الْقَوْلِ ۗ بَلْ زُيِّنَ لِلَّذِينَ كَفَرُوا مَكْرُهُمْ وَصُدُّوا عَنِ السَّبِيلِ ۗ وَمَنْ يُضْلِلِ اللّٰهُ فَمَا لَهُ مِنْ هَادٍ ﴿٣٣﴾

३४. जो प्रत्येक आत्माको कमाइको (रेखदेख गर्न) उपस्थित छ, उसले (तिनीहरूलाई दण्डित नतुल्याइ छाड्ला त)? तैपनि तिनीहरू अल्लाहका भागीदार तुल्याइरहेछन् । तिमी भन, "तिनीहरूको नाम भन ।" के तिमीहरू उनलाई पृथ्वीमा रहेको परन्तु उनलाई थाहा नभएको कुराबारे अवगत गराउँछौ त? अथवा, के त्यो व्यर्थ भनाइ मात्र हो त? त्यसो होइन, अपितु अविश्वासी व्यक्तिहरूको योजनालाई तिनीहरूका दृष्टिमा सुन्दर (तुल्याएर) देखाइएको छ, तथा तिनीहरूलाई (सीधा) मार्गबाट रोकिएको छ । तथा जसलाई अल्लाहले पथभ्रष्ट हुन दिन्छन् त्यसका निम्ति कोही मार्गदर्शक हुन सक्दैन ।

لَهُمْ عَذَابٌ فِي الْحَيَاةِ الدُّنْيَا وَ

३५. तिनीहरूका निम्ति यस संसारमा

لَعَذَابُ الْاٰخِرَةِ اَشَقُّ ۚ وَمَا لَهُمْ مِّنَ اللّٰهِ مِنْ وَّاقٍ ﴿٣٤﴾

दण्ड निर्धारित छ; तथा निश्चय नै परलोकको दण्ड भने अझ कठोर रहेको छ, तथा तिनीहरूलाई अल्लाहबाट जोगाउने कोही हुने छैन ।

مَثَلُ الْجَنَّةِ الَّتِيْ وُعِدَ الْمُتَّقُوْنَ ۗ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ ۗ اُكُلُهَا دَآئِمٌ وَّظِلُّهَا ۗ تِلْكَ عُقْبَى الَّذِيْنَ اتَّقَوْا ۖ وَّعُقْبَى الْكٰفِرِيْنَ النَّارُ ﴿٣٥﴾

३६. अल्लाहको डर धारण गर्ने व्यक्तिहरूलाई वचन दिइएको स्वर्गको उपमा त्यो बगैंचा (सदृश) रहेको छ जसमनि नहरहरू बग्ने गर्छन्; त्यसको फल अविनाशी रहेको छ भने त्यसको छायाँ (पनि अविनाशी नै छ) । यही नै सत्यनिष्ठ व्यक्तिहरूको प्रतिदान हो; तथा अविश्वासी व्यक्तिहरूको प्रतिदान भने अग्नि रहेको छ ।

وَالَّذِيْنَ اٰتَيْنٰهُمُ الْكِتٰبَ يَفْرَحُوْنَ بِمَآ اُنْزِلَ اِلَيْكَ وَمِنَ الْاَحْزَابِ مَنْ يُّنْكِرُ بَعْضَهٗ ۗ قُلْ اِنَّمَآ اُمِرْتُ اَنْ اَعْبُدَ اللّٰهَ وَلَآ اُشْرِكَ بِهٖ ۗ اِلَيْهِ اَدْعُوْا وَاِلَيْهِ مَاٰبِ ﴿٣٦﴾

३७. तथा जुन व्यक्तिहरूलाई हामीले पुस्तक प्रदान गरेका छौं तिनीहरू त्यस कुराप्रति प्रसन्न हुन्छन् जुन कुरा तिमीमाथि अवतीर्ण गरिएको छ । तथा (विभिन्न) समूहहरूमध्ये (केही व्यक्तिहरू) यस्ता छन् जसले त्यसको केही भागलाई अस्वीकार गर्छन् । तिमी भन, "मलाई त केवल अल्लाहको उपासना गर्ने र उनका भागिदार नतुल्याउन आदेश दिइएको छ । म उनीतर्फ नै आह्वान गर्छु, तथा उनीतर्फ नै मैले फर्कनु छ ।"

وَكَذٰلِكَ اَنْزَلْنٰهُ حُكْمًا عَرَبِيًّا ۗ وَلَئِنِ اتَّبَعْتَ اَهْوَآءَهُمْ بَعْدَ مَا جَآءَكَ مِنَ الْعِلْمِ ۙ مَا لَكَ مِنَ اللّٰهِ مِنْ وَّلِيٍّ وَّلَا وَاقٍ ﴿٣٧﴾

३८. तथा यसै प्रकार हामीले यसलाई एउटा स्पष्ट निर्णयस्वरूप अवतीर्ण गरेका छौं । तथा तिमीसमक्ष ज्ञानको आगमन भएपश्चात् यदि तिमीले तिनीहरूका निकृष्ट चाहनाहरूको अनुसरण गऱ्यौ भने, अल्लाहविरुद्ध तिम्रा निम्ति न कोही मित्र हुनेछ न कोही प्रतिरक्षक नै ।

३९. तथा वास्तवमा तिमीभन्दा अघि हामीले सन्देशवाहकहरू पठाएका थियौं, र तिनीहरूलाई पत्नीहरू र सन्तानहरू प्रदान गरेका थियौं । तथा अल्लाहको आदेशबिना चिह्न प्रस्तुत गर्नु कुनै सन्देशवाहकका निम्ति सम्भव रहेको छैन । हरेक म्यादका निम्ति एउटा (अल्लाहीय) आदेश -निर्धारित) रहेको छ ।

وَلَقَدْ اَرْسَلْنَا رُسُلًا مِّنْ قَبْلِكَ وَجَعَلْنَا لَهُمْ اَزْوَاجًا وَّذُرِّيَّةً ، وَمَا كَانَ لِرَسُوْلٍ اَنْ يَّاْتِيَ بِاٰيَةٍ اِلَّا بِاِذْنِ اللّٰهِ ، لِكُلِّ اَجَلٍ كِتَابٌ ﴿٣٨﴾

४०. जुन वस्तुलाई अल्लाहले इच्छा गर्छन् मेटाउछन् तथा (जुनलाई इच्छा गर्छन् कायम गर्छन्), तथा सम्पूर्ण विधानहरूको मूल उनीसितै रहेको छ ।

يَمْحُوا اللّٰهُ مَا يَشَآءُ وَيُثْبِتُ ۚ وَعِنْدَهٗٓ اُمُّ الْكِتٰبِ ﴿٣٩﴾

४१. तथा चाहे हामी तिमीलाई ती कुराहरूमध्ये जसद्वारा हामीले तिनीहरूलाई चेतावनी दिन्छौं केही (पूर्ण भएको) देखाऔंवा तिमीलाई मृत्यु प्रदान गरौं, (यसमा खासै फरक पर्नेछैन) किनभने तिम्रो कार्य त केवल सन्देशवहन गर्नु रहेको छ, तथा हिसाब लिने जिम्मेवारी हाम्रो रहेको छ ।

وَاِنْ مَّا نُرِيَنَّكَ بَعْضَ الَّذِيْ نَعِدُهُمْ اَوْ نَتَوَفَّيَنَّكَ فَاِنَّمَا عَلَيْكَ الْبَلٰغُ وَعَلَيْنَا الْحِسَابُ ﴿٤٠﴾

४२. हामी पृथ्वीलाई त्यसका बाहिरी सीमाहरूबाट सङ्कीर्ण तुल्याउँदै आइरहेका छौं भन्ने कुरा के तिनीहरूले देखेका छैनन् र? तथा अल्लाह नै निर्णय गर्छन्; उनको निर्णयलाई परिवर्तन गर्ने कोही छैन । तथा उनी शीघ्र हिसाब लिने गर्छन् ।

اَوَلَمْ يَرَوْا اَنَّا نَاْتِي الْاَرْضَ نَنْقُصُهَا مِنْ اَطْرَافِهَا ، وَاللّٰهُ يَحْكُمُ لَا مُعَقِّبَ لِحُكْمِهٖ ، وَهُوَ سَرِيْعُ الْحِسَابِ ﴿٤١﴾

४३. तथा तिनीहरूभन्दा पहिलाका व्यक्तिहरूले (पनि) योजनाहरू बनाएका

وَقَدْ مَكَرَ الَّذِيْنَ مِنْ قَبْلِهِمْ فَلِلّٰهِ الْمَكْرُ جَمِيْعًا ، يَعْلَمُ مَا تَكْسِبُ

كُلُّ نَفْسٍ ۚ وَسَيَعْلَمُ الْكُفَّارُ لِمَنْ عُقْبَى الدَّارِ ﴿٤٢﴾

थिए,परन्तु (प्रभावकारी) योजना बनाउनु त केवल अल्लाहकै कार्य रहेको छ । हरेक आत्माले कुन कुरा कमाउँछ भन्ने उनलाई थाहा छ (त्यस) वासस्थानको अन्तिम प्रतिदान कसका निम्ति रहनेछ भन्ने कुरा अविश्वासीहरूले शीघ्र नै जान्नेछन् ।

وَيَقُولُ الَّذِينَ كَفَرُوا لَسْتَ مُرْسَلًا ۚ قُلْ كَفَىٰ بِاللَّهِ شَهِيدًا بَيْنِي وَبَيْنَكُمْ ۙ وَمَنْ عِندَهُ عِلْمُ الْكِتَابِ ﴿٤٣﴾

४४. तथा अविश्वासीहरू भन्छन्, "तिमी सन्देशवाहक होइनौ ।" तिमी भन, "तिमीहरू र मेरा बीच अल्लाह नै साक्षीस्वरूप पर्याप्त रहेका छन्, तथा यसै प्रकार त्यो जसले पुस्तकको ज्ञान राख्दछ।"

سُوْرَةُ اِبْرَاهِيْمَ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ ثَلٰثٌ وَّخَمْسُوْنَ اٰيَةً وَّسَبْعَةُ رُكُوْعَاتٍ

## इब्राहिम

(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु अल्लाहको नाममा ।

الٓرٰ ۚ كِتٰبٌ اَنْزَلْنٰهُ اِلَيْكَ لِتُخْرِجَ النَّاسَ مِنَ الظُّلُمٰتِ اِلَى النُّوْرِ ۙ۬ بِاِذْنِ رَبِّهِمْ اِلٰى صِرَاطِ الْعَزِيْزِ الْحَمِيْدِ ۙ②

२. अलिफ लाम रा* (यो) एउटा पुस्तक (हो) जुन हामीले तिमीप्रति अवतीर्ण गरेका छौं ताकि तिमी मानवजातिलाई तिनीहरूका प्रतिपालकको आदेशानुसार सबै (प्रकारको) अन्धकारबाट निकालेर प्रकाशतर्फ ल्याउ,(अर्थात्) सर्वशक्तिमान, प्रशंसनीय अल्लाहका मार्गतर्फ-

اللّٰهِ الَّذِيْ لَهٗ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْاَرْضِ ؕ وَوَيْلٌ لِّلْكٰفِرِيْنَ مِنْ عَذَابٍ شَدِيْدِ ۙ③

३. उनै अल्लाह जो आकाशमण्डल र पृथ्वीमा रहेका सबै वस्तुहरूका स्वामी रहेका छन् । तथा कठोर दण्डका कारण ती अविश्वासीहरूमाथि धिक्कार छ :

الَّذِيْنَ يَسْتَحِبُّوْنَ الْحَيٰوةَ الدُّنْيَا عَلَى الْاٰخِرَةِ وَيَصُدُّوْنَ عَنْ سَبِيْلِ اللّٰهِ وَيَبْغُوْنَهَا عِوَجًا ؕ اُولٰٓئِكَ فِيْ ضَلٰلٍۢ بَعِيْدٍ ④

४. ती व्यक्तिहरू जसले सांसारिक जीवनलाई परलोकमाथि प्राथमिकता दिन्छन्, तथा (मानिसहरूलाई) अल्लाहका मार्गबाट रोक्छन् तथा त्यसलाई विकृत तुल्याउन चाहन्छन् । ती उनीहरू नै हुन् जो पथभ्रष्टतामा धेरै टाढा पुगेका छन् ।

وَمَآ اَرْسَلْنَا مِنْ رَّسُوْلٍ اِلَّا بِلِسَانِ قَوْمِهٖ لِيُبَيِّنَ لَهُمْ ؕ فَيُضِلُّ اللّٰهُ مَنْ يَّشَآءُ وَيَهْدِيْ مَنْ يَّشَآءُ ؕ وَهُوَ الْعَزِيْزُ الْحَكِيْمُ ⑤

५. तथा हामीले प्रत्येक सन्देशवाहकलाई आ-आफ्नै मानिसहरू(ले बोल्ने) भाषाका साथ पठाएका छौं ताकि त्यसद्वारा उनले तिनीहरूसमक्ष (सम्पूर्ण कुराहरू) स्पष्टरूपमा वर्णन गर्न सकून् । त्यसपछि अल्लाहले जसलाई चाहन्छन् पथभ्रष्ट हुन दिन्छन्, तथा जसलाई उनले चाहन्छन्

---

* म सर्वद्रष्टा अल्लाह हुँ ।

मार्ग देखाउँछन् । तथा उनी सर्वशक्तिमान, तत्त्वज्ञ रहेका छन् ।

५. तथा हामीले मूसालाई आफ्ना चिह्नहरूका साथ (के भन्दै) पठाएका थियौं (भने), "तिमी आफ्ना मानिसहरूलाई सबै (प्रकारका) अन्धकारबाट निकालेर प्रकाशतर्फ ल्याउ, तथा तिनीहरूलाई अल्लाहका दिनहरू स्मरण गराउ ।" निश्चय नै, हरेक धैर्यधारी (र) कृतज्ञ व्यक्तिका निम्ति यसमा चिह्नहरू रहेका छन् ।

وَلَقَدْ أَرْسَلْنَا مُوسَىٰ بِآيَاتِنَا أَنْ أَخْرِجْ قَوْمَكَ مِنَ الظُّلُمَاتِ إِلَى النُّورِ وَذَكِّرْهُمْ بِأَيَّامِ اللَّهِ ۚ إِنَّ فِي ذَٰلِكَ لَآيَاتٍ لِكُلِّ صَبَّارٍ شَكُورٍ ۝٥

७. तथा (स्मरण गर) जब मुसाले आफ्ना मानिसहरूलाई भनेका थिए, "तिमीहरूमाथि अल्लाहले गरेको त्यस अनुग्रहलाई स्मरण गर जब उनले तिमीहरूलाई फिरौनका ती मानिसहरूबाट मुक्त गरेका थिए जसले तिमीहरूलाई कठोर यातना दिन्थे, तिमीहरूका पुत्रहरूको हत्या गर्थे, र तिमीहरूका महिलाहरूलाई भने जीवित राख्थे; तथा त्यसमा तिमीहरूका निम्ति तिमीहरूका प्रतिपालकका तर्फबाट एउटा ठूलो परीक्षा थियो ।"

وَإِذْ قَالَ مُوسَىٰ لِقَوْمِهِ اذْكُرُوا نِعْمَةَ اللَّهِ عَلَيْكُمْ إِذْ أَنْجَاكُمْ مِنْ آلِ فِرْعَوْنَ يَسُومُونَكُمْ سُوءَ الْعَذَابِ وَيُذَبِّحُونَ أَبْنَاءَكُمْ وَيَسْتَحْيُونَ نِسَاءَكُمْ ۚ وَفِي ذَٰلِكُمْ بَلَاءٌ مِنْ رَبِّكُمْ عَظِيمٌ ۝٦

८. तथा (त्यस समयको पनि स्मरण गर) जब तिमीहरूका प्रतिपालकले घोषणा गरेका थिए, "यदि तिमीहरू कृतज्ञ रहेमा म तिमीहरूमाथि अझ अधिक (अनुग्रहको) वर्षण गर्नेछु; परन्तु यदि तिमीहरू अकृतज्ञ रहेमा, मेरो दण्ड वास्तवमै कठोर रहेको छ (भनी जान) ।"

وَإِذْ تَأَذَّنَ رَبُّكُمْ لَئِنْ شَكَرْتُمْ لَأَزِيدَنَّكُمْ ۖ وَلَئِنْ كَفَرْتُمْ إِنَّ عَذَابِي لَشَدِيدٌ ۝٧

९. तथा मूसाले भने, "यदि तिमीहरूले अविश्वास गर्‍यौ, तिमीहरू तथा पृथ्वीमा रहेका अन्य सबै व्यक्तिहरू, (तापनि तिमीहरूले अल्लाहको कुनै हानि गर्न सक्ने

وَقَالَ مُوسَىٰ إِنْ تَكْفُرُوا أَنْتُمْ وَمَنْ فِي الْأَرْضِ جَمِيعًا فَإِنَّ اللَّهَ لَغَنِيٌّ حَمِيدٌ ۝٨

छैनौ), वस्तुतः अल्लाह पूर्णआत्मनिर्भर, प्रशंसनीय छन् ।"

१०. क तिमीहरूभन्दा पहिलाका व्यक्तिहरू अर्थात् नूहका जाति, तथा आद् र समूद (का जाति), तथा तिनीहरू पछिका जातिहरूको सन्देश तिमीहरूलाई प्राप्त भएको छैन र? अल्लाहबाहेक (अब) तिनीहरूलाई अन्य कसैले जान्दैन । तिनीहरूसमक्ष तिनीहरूका सन्देशवाहकहरू स्पष्ट चिह्न लिएर आएका थिए, परन्तु तिनीहरूले आफ्ना हात आफ्नै मुखतर्फ फर्काएर* भने, "जुन कुराका साथ तिमीहरूलाई पठाइएको छ त्यस कुराप्रति हामी विश्वास गर्दैनौं तथा जुनकुरातर्फ तिमीहरू हामीलाई डाकिरहेछौ त्यसका सम्बन्धमा हामी निश्चय नै एउटा अशान्ति

أَلَمْ يَأْتِكُمْ نَبَؤُا الَّذِينَ مِن قَبْلِكُمْ قَوْمِ نُوحٍ وَعَادٍ وَثَمُودَ وَالَّذِينَ مِن بَعْدِهِمْ لَا يَعْلَمُهُمْ إِلَّا اللَّهُ جَاءَتْهُمْ رُسُلُهُم بِالْبَيِّنَاتِ فَرَدُّوا أَيْدِيَهُمْ فِي أَفْوَاهِهِمْ وَقَالُوا إِنَّا كَفَرْنَا بِمَا أُرْسِلْتُم بِهِ وَإِنَّا لَفِي شَكٍّ مِّمَّا تَدْعُونَنَا إِلَيْهِ مُرِيبٍ ﴿١٠﴾

* कुरानको उक्त 'फरद्दो अइदियाहुम फि अफ्‌वाहिहिम्' (فَرَدُّوا أَيْدِيَهُمْ فِي أَفْوَاهِهِمْ) अर्थात् (तिनीहरूले आफ्ना हात आफ्नै मुखतर्फ फर्काए) अभिव्यक्तिले कुनै व्यक्तिले अवरोधको सङ्केत गर्दै आफ्नो हात आफ्नै मुखमा राखेको चि त्राङ्कन गर्छ । उक्त विशेष अभिव्यक्तिको व्याख्या गर्नुअघि एउटा व्यक्तिले उक्त आयतमा कसको उल्लेख गरिएको छ भन्ने कुरो राम्ररी जान्नु पनि आवश्यक छ । त्यो कार्य स्पष्टतयाः अविश्वासीहरूकै हो भन्न सकिन्छ; अतः दुई प्रकारले यसको व्याख्या गर्न सकिन्छ । तिनीहरूले आफ्ना हात आ-आफ्नै मुखमा ठोँसे भनी, तिनीहरूलाई दृष्टिगत गरी यसको अनुवाद गर्न सकिन्छ । अतः त्यसको अर्थ के हुन्छ भने, तिनीहरूले सन्देशवाहकहरू तथा तिनीहरूका अनुयायीहरूसित कुनै प्रकारको वार्ता गर्न अस्वीकार गरे । जब एउटा व्यक्ति अन्तमा गएर निरुत्तर हुन्छ र त्यससित कुनै तर्क शेष रहदैन तब त्यो अवस्था आउँछ । अतः आफूले बोल्न केही शेष रहेको छैन भन्ने कुराको सङ्केतस्वरूप बहिस्कारको त्यो ढङ्ग अपनाउँछ । दोस्रो अर्थमा सन्देशवाहकहरूका मुखतर्फ (हात बढाएको (भन्ने कुराको) उल्लेख हुन सक्छ । यसले पनि त्यही वार्ता रोक्ने (कुरोतर्फ) सङ्केत गर्छ परन्तु अर्कै तरीकाले । यसप्रकार के सन्देश हुन सक्छ भने, अविश्वासीहरूले अन्तमा सन्देशवाहकहरूलाई आफ्नो मुख बन्द राख भनी प्रचार-प्रसारबाट रोके । यस वैकल्पिक (अनुवाद) लाई उक्त आयतको शेषभागले समेत समर्थन गर्छ जहाँ अविश्वासीहरू के भन्दै त्यस प्रसङ्गलाई निरन्तर अघि बढाउछन् भनेः 'हामीले त्यस सन्देशलाई अस्वीकार गरिसकेका छौं जसकासाथ तिमीहरूलाई पठाइएको थियो तथा तिमीहरू हामीलाई जुनकुरातर्फ बोलाउछौ त्यसका सम्बन्धमा हामी वास्तवमा विविध प्रकारका सन्देहमा डुबेकाछौं' ।

सिर्जना गर्ने सन्देहमा छौं ।"

قَالَتْ رُسُلُهُمْ أَفِي اللّٰهِ شَكٌّ فَاطِرِ السَّمٰوٰتِ وَالْأَرْضِ ، يَدْعُوكُمْ لِيَغْفِرَ لَكُمْ مِّنْ ذُنُوبِكُمْ وَيُؤَخِّرَكُمْ إِلٰى أَجَلٍ مُّسَمًّى ، قَالُوْا إِنْ أَنْتُمْ إِلَّا بَشَرٌ مِّثْلُنَا ، تُرِيْدُوْنَ أَنْ تَصُدُّوْنَا عَمَّا كَانَ يَعْبُدُ آبَاؤُنَا فَأْتُوْنَا بِسُلْطٰنٍ مُّبِيْنٍ ﴿١١﴾

११. तिनीहरूका सन्देशवाहकहरूले भने, "के तिमीहरू आकाशमण्डल र पृथ्वीका सिर्जनहार, अल्लाहका बारेमा सन्देह गर्छौ? उनी त तिमीहरूलाई तिमीहरूका पाप क्षमा गर्नका निम्ति तथा एउटा निर्धारित समयसम्म तिमीहरूलाई अवसर प्रदान गर्नका निम्ति आह्वान गरिरहेछन् ।" तिनीहरूले भने, "तिमीहरू हामीजस्तै मानिसहरू नै हौ, जसको हाम्रा पितृहरू उपासना गर्ने गर्थे त्यसबाट तिमीहरू हामीलाई हटाउन चाहन्छौ । अतः हामीसमक्ष एउटा स्पष्ट प्रमाण प्रस्तुत गर ।"

قَالَتْ لَهُمْ رُسُلُهُمْ إِنْ نَّحْنُ إِلَّا بَشَرٌ مِّثْلُكُمْ وَلٰكِنَّ اللّٰهَ يَمُنُّ عَلٰى مَنْ يَّشَاءُ مِنْ عِبَادِهِ ، وَمَا كَانَ لَنَا أَنْ نَّأْتِيَكُمْ بِسُلْطٰنٍ إِلَّا بِإِذْنِ اللّٰهِ ، وَعَلَى اللّٰهِ فَلْيَتَوَكَّلِ الْمُؤْمِنُوْنَ ﴿١٢﴾

१२. तिनीहरूका सन्देशवाहकहरूले तिनीहरूलाई भने, "हामी निस्सन्देह (केवल) तिमीहरूजस्तै मानिसहरू नै हौं, परन्तु अल्लाहले आफ्ना सेवकहरूमध्ये जसलाई चाहन्छन् अनुग्रह वर्षण गर्छन् । अल्लाहको आदेशबिना तिमीहरूसमक्ष कुनै प्रमाण प्रस्तुत गर्नु हाम्रा निम्ति सम्भव छैन । तथा विश्वासीहरूले त (केवाल) अल्लाहमाथि आफ्नो भरोसा राख्नु उचित हुनेछ ।

وَمَا لَنَا أَلَّا نَتَوَكَّلَ عَلَى اللّٰهِ وَقَدْ هَدٰنَا سُبُلَنَا ، وَلَنَصْبِرَنَّ عَلٰى مَا آذَيْتُمُوْنَا ، وَعَلَى اللّٰهِ فَلْيَتَوَكَّلِ الْمُتَوَكِّلُوْنَ ﴿١٣﴾

१३. तथा हामीले अल्लाहमाथि आफ्नो भरोसा किन नराखौं "वस्तुतः उनले नै हामीलाई हाम्रा मार्गहरू देखाएका छन्, तथा जुन कष्टहरू तिमीहरू हामीलाई दिनेगर्छौ त्यसप्रति हामी अवश्य धैर्यधारण गर्दै जानेछौ । अतः भरोसा गर्ने व्यक्तिहरूले त अल्लाहमाथि नै आफ्नो भरोसा राख्नु उचित हुन्छ ।"

وَقَالَ الَّذِيْنَ كَفَرُوْا لِرُسُلِهِمْ

१४. तथा ती अविश्वासी व्यक्तिहरूले आफ्ना सन्देशवाहकहरूलाई भने, "हामी

لَنُخْرِجَنَّكُمْ مِّنْ أَرْضِنَآ أَوْ لَتَعُودُنَّ فِي مِلَّتِنَا ۖ فَأَوْحَىٰٓ إِلَيْهِمْ رَبُّهُمْ لَنُهْلِكَنَّ ٱلظَّـٰلِمِينَ ﴿١٣﴾

अवश्य तिमीहरूलाई आफ्ना देशबाट निकाल्नेछौं नत्र भने तिमीहरूले हाम्रा मार्गतर्फ फर्किनु पर्नेछ ।" तब तिनीहरूका प्रतिपालकले तिनीहरूमाथि के आकाशवाणी गरे भने: "हामी अत्याचारीहरूलाई अवश्य विनष्ट गर्नेछौं ।"

وَلَنُسْكِنَنَّكُمُ ٱلْأَرْضَ مِنۢ بَعْدِهِمْ ۚ ذَٰلِكَ لِمَنْ خَافَ مَقَامِي وَخَافَ وَعِيدِ ﴿١٤﴾

१५. "तथा तिनीहरूपछि हामी तिमीहरू लाई अवश्य त्यस देशमा पुनर्वास प्रदान गर्नेछौं । जो व्यक्ति मेरो दर्जाबाट डराएर खडा हुन्छ तथा मेरो चेतावनीबाट उपदेश लिन्छ यो त्यसैका निम्ति रहेको छ ।

وَٱسْتَفْتَحُوا۟ وَخَابَ كُلُّ جَبَّارٍ عَنِيدٍ ﴿١٥﴾

१६. तथा तिनीहरूले विजय प्राप्तिका निम्ति प्रार्थना गरे, तथा (त्यसको परिणामस्वरूप) प्रत्येक अभिमानी सत्यसको) शत्रु असफल हुन गयो ।

مِّن وَرَآئِهِۦ جَهَنَّمُ وَيُسْقَىٰ مِن مَّآءٍ صَدِيدٍ ﴿١٦﴾

१७. त्यसका अगाडि नर्क रहेको छ; तथा तयसलाई उम्लदो पानी पियाइने छ ।

يَتَجَرَّعُهُۥ وَلَا يَكَادُ يُسِيغُهُۥ وَيَأْتِيهِ ٱلْمَوْتُ مِن كُلِّ مَكَانٍ وَمَا هُوَ بِمَيِّتٍ ۖ وَمِن وَرَآئِهِۦ عَذَابٌ غَلِيظٌ ﴿١٧﴾

१८. उसले त्यसलाई ठूलो घुट्की लगाउन नसक्ने हुनाले अनिच्छापूर्वक अलि-अलि गरी पिउनेछ । तथा चारै तर्फबाट त्यससमक्ष मृत्युको आगमन हुनेछ, तथापि) त्यो( व्यक्ति) मर्नेछैन । तथा त्यस अतिरिक्त (त्यसलाई) त्यहाँ कठोर दण्ड मिल्नेछ ।

مَّثَلُ ٱلَّذِينَ كَفَرُوا۟ بِرَبِّهِمْ ۖ أَعْمَـٰلُهُمْ كَرَمَادٍ ٱشْتَدَّتْ بِهِ ٱلرِّيحُ فِي يَوْمٍ عَاصِفٍ ۖ لَّا يَقْدِرُونَ مِمَّا كَسَبُوا۟ عَلَىٰ شَىْءٍ ۚ ذَٰلِكَ هُوَ ٱلضَّلَـٰلُ ٱلْبَعِيدُ ﴿١٨﴾

१९. जुन व्यक्तिहरूले आफ्ना प्रतिपालकप्रति अविश्वास गर्छन्, तिनीहरूको मामिला अर्थात् तिनीहरूका कार्यहरू त्यस खरानीसदृश रहेका छन् जसलाई कुनै आँधीयुक्त दिन हुरीले उडाएर लैजान्छ । तिनीहरूलाई आफ्नो कमाइमाथि कुनै अधिकार प्राप्त हुनेछैन । त्यही नै निस्सन्देह सर्वाधिक विनष्टता रहेको छ ।

أَلَمْ تَرَ أَنَّ اللَّهَ خَلَقَ السَّمَاوَاتِ وَالْأَرْضَ بِالْحَقِّ ۚ إِن يَشَأْ يُذْهِبْكُمْ وَيَأْتِ بِخَلْقٍ جَدِيدٍ ﴿١٩﴾

२०. के अल्लाहले आकाशमण्डल र पृथ्वीको सृष्टि सत्यमा आधारित गरेका छन् भन्ने कुरा तिमी देख्दैनौ र? यदि उनले चाहेमा तिमीहरूलाई लगेर एउटा नयाँ सृष्टि ल्याउन सक्छन् ।

وَمَا ذَٰلِكَ عَلَى اللَّهِ بِعَزِيزٍ ﴿٢٠﴾

२१. तथा अल्लाहका निम्ति त्यो कार्य (कति पनि) कठिन रहेको छैन ।

وَبَرَزُوا لِلَّهِ جَمِيعًا فَقَالَ الضُّعَفَاءُ لِلَّذِينَ اسْتَكْبَرُوا إِنَّا كُنَّا لَكُمْ تَبَعًا فَهَلْ أَنتُم مُّغْنُونَ عَنَّا مِنْ عَذَابِ اللَّهِ مِن شَيْءٍ ۚ قَالُوا لَوْ هَدَانَا اللَّهُ لَهَدَيْنَاكُمْ ۖ سَوَاءٌ عَلَيْنَا أَجَزِعْنَا أَمْ صَبَرْنَا مَا لَنَا مِن مَّحِيصٍ ﴿٢١﴾

२२. तिनीहरू सबैजना अल्लाहका सामुन्ने उपस्थित हुनेछन्; अतः दुर्बल व्यक्तिहरूले अहङ्कारपूर्ण व्यवहार गर्ने गरेका व्यक्तिहरूलाई के भन्नेछन् भने: "हामी त निस्सन्देह तिमीहरूकै अनुयायी थियौं; अतः के तिमीहरूले अल्लाहको दण्डविरुद्ध हाम्रो केही लाभ पुऱ्याउन सक्दैनौ त?" तिनीहरूले भन्नेछन्, "यदि अल्लाहले हामीलाई मार्ग देखाएका भए हामी निश्चय नै तिमीहरूलाई (मार्ग) देखाउने थियौं । (परन्तु आज) हामीले चाहे अधैर्यता देखाऔं अथवा धैर्यधारण गरौं, हाम्रा निम्ति एकसमान रहेको छ: (कारण) हाम्रा निम्ति बच्ने कुनै मार्ग रहेको छैन ।"

وَقَالَ الشَّيْطَانُ لَمَّا قُضِيَ الْأَمْرُ إِنَّ اللَّهَ وَعَدَكُمْ وَعْدَ الْحَقِّ وَوَعَدتُّكُمْ فَأَخْلَفْتُكُمْ ۖ وَمَا كَانَ لِيَ عَلَيْكُم مِّن سُلْطَانٍ إِلَّا أَن دَعَوْتُكُمْ فَاسْتَجَبْتُمْ لِي ۖ فَلَا تَلُومُونِي وَلُومُوا أَنفُسَكُم ۖ مَّا أَنَا بِمُصْرِخِكُمْ وَمَا أَنتُم بِمُصْرِخِيَّ ۖ إِنِّي كَفَرْتُ بِمَا أَشْرَكْتُمُونِ مِن قَبْلُ ۗ إِنَّ الظَّالِمِينَ لَهُمْ عَذَابٌ أَلِيمٌ ﴿٢٢﴾

२३. तथा जब मामिलाको टुंगो लगाइनेछ (तब) शैतानले भन्नेछ, "अल्लाहले तिमीहरूसित सत्य अङ्गीकार गरेका थिए, परन्तु मैले त तिमीहरूसित अङ्गीकार गरें तर पूरा गरिंन । तथा तिमीहरूमाथि मेरो कुनै सामर्थ्य थिएन परन्तु मैले तिमीहरूलाई बोलाएँ, तिमीहरू मेरा आज्ञाकारी बन्यौ । त्यसकारण मेरो निन्दा नगर, अपितु आफ्नै निन्दा गर । म तिमीहरूको सहयोग गर्न सक्दिन न त तिमीहरूले नै मेरो सहयोग गर्न सक्छौ । तिमीहरूले मलाई (अल्लाहको) भागीदार तुल्याएका थियौ (भन्ने कुरालाई) मैले

पहिला नै अस्वीकार गरिसकेको छु । यस्ता अत्याचारीहरूका निम्ति निश्चयपूर्वक पीडादायक दण्ड छ ।

وَ اُدْخِلَ الَّذِيْنَ اٰمَنُوْا وَ عَمِلُوا الصّٰلِحٰتِ جَنّٰتٍ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ خٰلِدِيْنَ فِيْهَا بِاِذْنِ رَبِّهِمْ ؕ تَحِيَّتُهُمْ فِيْهَا سَلٰمٌ ﴿٢٤﴾

२४. तथा ती व्यक्तिहरू, जसले विश्वास गर्छन् तथा पुण्यकर्म गर्छन् तिनीहरूलाई यस्ता बगैंचाहरूमा दाखिल गरिनेछ जसमुनि नहरहरू बग्ने गर्छन्, त्यहाँ तिनीहरू आफ्ना प्रतिपालकको आदेशअनुसार सदा बसोवास गर्नेछन् । त्यहाँ तिनीहरूको उपहार हुनेछ– "शान्ति"

اَلَمْ تَرَ كَيْفَ ضَرَبَ اللّٰهُ مَثَلًا كَلِمَةً طَيِّبَةً كَشَجَرَةٍ طَيِّبَةٍ اَصْلُهَا ثَابِتٌ وَّ فَرْعُهَا فِي السَّمَآءِ ﴿٢٥﴾

२५. अल्लाहले कसरी एउटा पवित्र शब्दको उपमा दिएका छन् भन्ने कुरा तिमीलाई थाहा छैन र? त्यो एउटा पवित्र वृक्षस्वरूप हुन्छ, जसको मूल दृढ हुन्छ तथा जसका हाँगाहरू आकाशसम्म (पुगेका) हुन्छन् ।

تُؤْتِيْٓ اُكُلَهَا كُلَّ حِيْنٍۭ بِاِذْنِ رَبِّهَا ؕ وَ يَضْرِبُ اللّٰهُ الْاَمْثَالَ لِلنَّاسِ لَعَلَّهُمْ يَتَذَكَّرُوْنَ ﴿٢٦﴾

२६. तथा त्यसले आफ्ना प्रतिपालकको आदेशअनुसार निरन्तर आफ्ना फलहरू दिने गर्छ । तथा अल्लाहले मानिसहरूका निम्ति तिनीहरूले अर्ती लिउन् भनी उपमाहरू वर्णन गर्ने गर्छन् ।

وَ مَثَلُ كَلِمَةٍ خَبِيْثَةٍ كَشَجَرَةٍ خَبِيْثَةِ اِۨجْتُثَّتْ مِنْ فَوْقِ الْاَرْضِ مَا لَهَا مِنْ قَرَارٍ ﴿٢٧﴾

२७. तथा अपवित्र शब्दको अवस्था भने एउटा (यस्तो) अपवित्र वृक्षसदृश रहेको छ, जसको जरो भूमिमाथि नै तेर्सिएको हुन्छ तथा त्यसलाई स्थिरता प्राप्त हुँदैन ।

يُثَبِّتُ اللّٰهُ الَّذِيْنَ اٰمَنُوْا بِالْقَوْلِ الثَّابِتِ فِي الْحَيٰوةِ الدُّنْيَا وَ فِي الْاٰخِرَةِ ۚ وَ يُضِلُّ اللّٰهُ الظّٰلِمِيْنَ ۙ۫ وَ يَفْعَلُ اللّٰهُ مَا يَشَآءُ ﴿٢٨﴾

२८. अल्लाहले विश्वासीजनलाई त्यस दृढस्थापित शब्दद्वारा यस संसार तथा परलोक (दुबै) मा शक्ति सम्पन्न तुल्याउँछन्; तथा अत्याचारीहरूलाई अल्लाहले पथभ्रष्ट हुन दिन्छन् । तथा अल्लाह जे चाहन्छन् त्यही गर्छन् ।

اَلَمْ تَرَ اِلَى الَّذِيْنَ بَدَّلُوْا نِعْمَتَ اللّٰهِ كُفْرًا وَّ اَحَلُّوْا قَوْمَهُمْ دَارَ الْبَوَارِ ﴿٢٩﴾

२९. के तिमीले तिनीहरूलाई देखेका छैनौ जसले अल्लाहको अनुग्रहलाई कृतघ्नतामा

परिवर्तन गरे तथा आफ्ना मानिसहरूलाई त्यस विनाशको बासस्थानमा उतारे-

३०. (जुन) नर्क (हो) ? त्यहाँ तिनीहरू जल्नेछन्; तथा त्यो एउटा निकृष्ट विश्रामस्थान रहेको छ ।

جَهَنَّمَ ۚ يَصْلَوْنَهَا ۖ وَبِئْسَ الْقَرَارُ ﴿٣٠﴾

३१. तथा तिनीहरूले अल्लाहका भागीदारहरू तुल्याएका छन् । ताकि मानिसहरूलाई उनका मार्गबाट विमुख तुल्याऊन्, तिमी भन, "तिमीहरू केही समयसम्म ता आनन्द उपभोग गर, तत्पश्चात् निश्चय नै तिमीहरूको यात्रा अग्नितर्फ हुने छ ।"

وَجَعَلُوا لِلَّهِ أَندَادًا لِّيُضِلُّوا عَن سَبِيلِهِ ۗ قُلْ تَمَتَّعُوا فَإِنَّ مَصِيرَكُمْ إِلَى النَّارِ ﴿٣١﴾

३२. मेरा ती सेवकहरूलाई, जसले विश्वास स्थापना गरेका छन्, के भनिदेउ भने, तिनीहरूले त्यसदिनको आगमनअघि नै जुन दिन न किन-बेच हुनेछ न मित्रता नै, नमाज अनुष्ठान गरून् तथा हामीले प्रदान गरेका वस्तुहरूबाट गुप्त रूपमा र प्रकाश्य रूपमा खर्च गरून् ।

قُل لِّعِبَادِيَ الَّذِينَ آمَنُوا يُقِيمُوا الصَّلَاةَ وَيُنفِقُوا مِمَّا رَزَقْنَاهُمْ سِرًّا وَعَلَانِيَةً مِّن قَبْلِ أَن يَأْتِيَ يَوْمٌ لَّا بَيْعٌ فِيهِ وَلَا خِلَالٌ ﴿٣٢﴾

३३. अल्लाह उनी नै हुन् जसले आकाशमण्डल र पृथ्वीलाई सृष्टि गरे तथा बादलबाट पानी बर्साए र त्यसैद्वारा तिमीहरूको खाद्य स्वरूप फलहरू उत्पन्न गरे; तथा उनले पानीजहाजहरूलाई उनकै आदेशअनुसार समुद्रमा चल्ने गरी तिमीहरूका सेवामा लगाएका छन्, यसैगरी नदीहरूलाई (पनि) उनले तिमीहरूका सेवामा खटाएका छन् ।

اللَّهُ الَّذِي خَلَقَ السَّمَاوَاتِ وَالْأَرْضَ وَأَنزَلَ مِنَ السَّمَاءِ مَاءً فَأَخْرَجَ بِهِ مِنَ الثَّمَرَاتِ رِزْقًا لَّكُمْ ۖ وَسَخَّرَ لَكُمُ الْفُلْكَ لِتَجْرِيَ فِي الْبَحْرِ بِأَمْرِهِ ۖ وَسَخَّرَ لَكُمُ الْأَنْهَارَ ﴿٣٣﴾

३४. तथा उनले सूर्य र चन्द्रमालाई निरन्तर गतिशील रहदै तिमीहरूको सेवा गर्न खटाएका छन् तथा उनले रात्रिलाई र दिनलाई समेत तिमीहरूका सेवामा

وَسَخَّرَ لَكُمُ الشَّمْسَ وَالْقَمَرَ دَائِبَيْنِ ۖ وَسَخَّرَ لَكُمُ اللَّيْلَ وَالنَّهَارَ ﴿٣٣﴾

खटाएका छन् ।

وَاٰتٰىكُمْ مِّنْ كُلِّ مَا سَاَلْتُمُوْهُ ؕ وَاِنْ تَعُدُّوْا نِعْمَتَ اللّٰهِ لَا تُحْصُوْهَا ؕ اِنَّ الْاِنْسَانَ لَظَلُوْمٌ كَفَّارٌ ﴿۳۵﴾

३५. तथा उनीसित तिमीहरूले मागेका सबै वस्तुहरू उनले तिमीहरूलाई प्रदान गरेका छन्; तथा यदि तिमीहरूले अल्लाहका अनुग्रहहरूको गणना गर्न प्रयास गरेमा तिमीहरूले तिनीहरूलाई गन्न सक्नेछैनौ । निस्सन्देह, मानिस अति अन्यायी र अकृतज्ञ रहेको छ ।

وَاِذْ قَالَ اِبْرٰهِيْمُ رَبِّ اجْعَلْ هٰذَا الْبَلَدَ اٰمِنًا وَّاجْنُبْنِيْ وَبَنِيَّ اَنْ نَّعْبُدَ الْاَصْنَامَ ﴿۳۶﴾

३६. तथा (स्मरण गर) जुनबेला इब्राहिमले भनेका थिए, "हे मेरा प्रतिपालक, यस नगरलाई शान्तिपूर्ण (नगर) बनाउ, तथा मलाई र मेरा सन्तानलाई मूर्तिहरूको उपासना गर्नबाट अलग्ग राख ।

رَبِّ اِنَّهُنَّ اَضْلَلْنَ كَثِيْرًا مِّنَ النَّاسِ ۚ فَمَنْ تَبِعَنِيْ فَاِنَّهٗ مِنِّيْ ۚ وَمَنْ عَصَانِيْ فَاِنَّكَ غَفُوْرٌ رَّحِيْمٌ ﴿۳۷﴾

३७. "हे मेरा प्रभू, तिनीहरूले धेरै मानिसहरूलाई पथभ्रष्ट तुल्याएका छन् । त्यसकारण जसले मेरो अनुसरण गर्छ, त्यो अवश्य मेरो हुनेछ तथा जसले मेरो अवज्ञा गर्छ- निश्चय नै, तिमी त परम क्षमाशील, परम दानशील रहेका छौ ।

رَبَّنَا اِنِّيْ اَسْكَنْتُ مِنْ ذُرِّيَّتِيْ بِوَادٍ غَيْرِ ذِيْ زَرْعٍ عِنْدَ بَيْتِكَ الْمُحَرَّمِ ۙ رَبَّنَا لِيُقِيْمُوا الصَّلٰوةَ فَاجْعَلْ اَفْـِٕدَةً مِّنَ النَّاسِ تَهْوِيْۤ اِلَيْهِمْ وَارْزُقْهُمْ مِّنَ الثَّمَرٰتِ لَعَلَّهُمْ يَشْكُرُوْنَ ﴿۳۸﴾

३८. "हे हाम्रा प्रतिपालक, मैले मेरा सन्तानमध्ये केहीलाई तिम्रो पवित्र घरको छेउमा रहेको बाँझो उपत्यकामा ल्याएर बसाएको छु– हे प्रतिपालक– ताकि तिनीहरूले नमाज अनुष्ठान गरून् । अतः मानिसहरूको हृदयलाई तिनीहरूतर्फ आकर्षित गरिदेउ तथा तिनीहरूलाई फलहरूद्वारा खाद्यव्यवस्था गर, ताकि तिनीहरू कृतज्ञ बनुन् ।

رَبَّنَاۤ اِنَّكَ تَعْلَمُ مَا نُخْفِيْ وَمَا نُعْلِنُ ؕ وَمَا يَخْفٰى عَلَى اللّٰهِ مِنْ شَيْءٍ فِي الْاَرْضِ وَلَا فِي السَّمَآءِ ﴿۳۹﴾

३९. "हे हाम्रा प्रतिपालक, हामी जुनकुरा गोप्य राख्छौं अथवा जुन कुरालाई प्रकट गर्छौं तिमी ती सबैलाई जान्दछौ । तथा अल्लाहबाट कुनै वस्तु न पृथ्वीमा न त

आकाशमा नै गुप्त रहन सक्छ ।

اَلْحَمْدُ لِلّٰهِ الَّذِيْ وَهَبَ لِيْ عَلَى الْكِبَرِ اِسْمٰعِيْلَ وَاِسْحٰقَ ۭ اِنَّ رَبِّيْ لَسَمِيْعُ الدُّعَاۗءِ ﴿٣٩﴾

४०. "सम्पूर्ण प्रशंसाहरू उनै अल्लाहका निम्ति रहेका छन् जसले मलाई (मेरो) बुढेसकाल उपरान्त ईस्माइल तथा इस्हाक प्रदान गरेका छन् । निस्सन्देह, मेरा प्रतिपालक प्रार्थना सुन्ने गर्छन् ।

رَبِّ اجْعَلْنِيْ مُقِيْمَ الصَّلٰوةِ وَمِنْ ذُرِّيَّتِيْ ڰ رَبَّنَا وَتَقَبَّلْ دُعَاۗءِ ﴿٤٠﴾

४१. "हे मेरा प्रतिपालक, मलाई र मेरा सन्तानलाई समेत नमाज अनुष्ठानकारी बनाउ । हे हाम्रा प्रतिपालक ! मेरो प्रार्थना स्वीकार गर ।

رَبَّنَا اغْفِرْ لِيْ وَلِوَالِدَيَّ وَلِلْمُؤْمِنِيْنَ يَوْمَ يَقُوْمُ الْحِسَابُ ﴿٤١﴾

४२. "हे हाम्रा प्रतिपालक, जुन दिन हिसाब लिइनेछ त्यसदिन मलाई र मेरा मातापिता तथा सम्पूर्ण विश्वासीजनलाई क्षमा प्रदान गर !"

وَلَا تَحْسَبَنَّ اللّٰهَ غَافِلًا عَمَّا يَعْمَلُ الظّٰلِمُوْنَ ڛ اِنَّمَا يُؤَخِّرُهُمْ لِيَوْمٍ تَشْخَصُ فِيْهِ الْاَبْصَارُ ﴿٤٢﴾

४३. तथा अत्याचारीहरूले जुन कार्य गर्ने गर्छन् त्यसप्रति अल्लाह अविदित छन् भनी नठान । उनी तिनीहरूलाई केवल त्यस दिनसम्मका निम्ति अवसर दिइरेछन् जुन दिन नेत्रहरू एकटक हेर्न लागिरहनेछन्,

مُهْطِعِيْنَ مُقْنِعِيْ رُءُوْسِهِمْ لَا يَرْتَدُّ اِلَيْهِمْ طَرْفُهُمْ ۚ وَاَفْـِٕدَتُهُمْ هَوَاۗءٌ ﴿٤٣﴾

४४. तिनीहरू डरका कारण आफ्नो टाउको उठाएर भागदौड गर्नेछन्, तिनीहरूका दृष्टि तिनीहरूतर्फ फर्कनेछैनन् तथा तिनीहरूको मन पूर्णरूपले रित्तो हुनेछ

وَاَنْذِرِ النَّاسَ يَوْمَ يَاْتِيْهِمُ الْعَذَابُ فَيَقُوْلُ الَّذِيْنَ ظَلَمُوْا رَبَّنَآ اَخِّرْنَآ اِلٰٓى اَجَلٍ قَرِيْبٍ ۙ نُّجِبْ دَعْوَتَكَ وَنَتَّبِعِ الرُّسُلَ ۭ اَوَلَمْ تَكُوْنُوْٓا اَقْسَمْتُمْ مِّنْ قَبْلُ مَا لَكُمْ مِّنْ زَوَالٍ ﴿٤٤﴾

४५. तथा मानिसहरूलाई त्यसदिन प्रति सावधान गर जुनदिन तिनीहरूमाथि (प्रतिश्रुत) दण्ड आइलाग्ने छ, तब अत्याचारीहरूले के भन्नेछन् भने, "हे हाम्रा प्रतिपालक, सीमित समयका लागि हामीलाई अवसर प्रदान गर । हामी तिम्रो आव्हान मान्नेछौं तथा सन्देशवाहकहरूको अनुसरण गर्नेछौं ।" "के यसअघि तिमीहरूले तिमीहरूको पतन हुनेछैन भनी

शपथ खाएका थिएनौ र?

४६. तथा जसले स्वयम्माथि अत्याचार गरेका थिए तिनीहरूकै निवासलाई तिमीहरूले आफ्नो निवास बनाएका छौ, तथा उनीहरूसित हामीले कस्तो व्यवहार गरेका थियौं भन्ने कुरा तिमीहरूलाई स्पष्ट भइसकेको छ; तथा तिमीहरूकानिम्ति हामीले (स्पष्ट) दृष्टान्तहरू वर्णन गरिसकेका छौं ।

وَّ سَكَنْتُمْ فِيْ مَسٰكِنِ الَّذِيْنَ ظَلَمُوْٓا اَنْفُسَهُمْ وَتَبَيَّنَ لَكُمْ كَيْفَ فَعَلْنَا بِهِمْ وَضَرَبْنَا لَكُمُ الْاَمْثَالَ ﴿٤٥﴾

४७. तथा तिनीहरूले आफूले सक्दो षडयन्त्र गरे परन्तु तिनीहरूको षडयन्त्र भने अल्लाहका जुनाफमा (सुरक्षित) छ । चाहे तिनीहरूको षडयन्त्र पहाडहरूलाई घुमाउन सक्ने शक्तियुक्त नै किन नहोस् ।

وَقَدْ مَكَرُوْا مَكْرَهُمْ وَعِنْدَ اللّٰهِ مَكْرُهُمْ وَاِنْ كَانَ مَكْرُهُمْ لِتَزُوْلَ مِنْهُ الْجِبَالُ ﴿٤٦﴾

४८. अल्लाह आफ्ना सन्देशवाहकहरू सित आफ्नो वचन पूरा गर्न असमर्थ रहनेछन् भनी नठान । निश्चय नै, अल्लाह सर्वशक्तिमान, कठोर प्रतिशोधकारी रहेका छन् ।

فَلَا تَحْسَبَنَّ اللّٰهَ مُخْلِفَ وَعْدِهٖ رُسُلَهٗ اِنَّ اللّٰهَ عَزِيْزٌ ذُو انْتِقَامٍ ﴿٤٧﴾

४९. त्यसदिन जब यस पृथ्वीलाई एउटा अर्के पृथ्वीमा परिवर्तन गरिनेछ; र आकाशमण्डललाई (पनि) । तथा तिनीहरू (सबै) अल्लाहका सामुन्ने उपस्थित हुनेछन् जो अद्वितीय, परम पराक्रमी रहेका छन्;

يَوْمَ تُبَدَّلُ الْاَرْضُ غَيْرَ الْاَرْضِ وَالسَّمٰوٰتُ وَبَرَزُوْا لِلّٰهِ الْوَاحِدِ الْقَهَّارِ ﴿٤٨﴾

५०. त्था त्यस दिन तिमी ती पराधीहरूलाई जन्जिरमा जकडिएको देख्नेछौ ।

وَتَرَى الْمُجْرِمِيْنَ يَوْمَىِٕذٍ مُّقَرَّنِيْنَ فِي الْاَصْفَادِ ﴿٤٩﴾

५१. तिनीहरूको पहिरन अलकत्राको हुनेछ, तथा तिनीहरूको मुहारलाई अग्निले ढाक्नेछ ।

سَرَابِيْلُهُمْ مِّنْ قَطِرَانٍ وَّتَغْشٰى وُجُوْهَهُمُ النَّارُ ﴿٥٠﴾

५२. (यो यसै प्रकार हुनेछ) ताकि अल्लाहले प्रत्येक आत्मालाई उसको कमाइको

لِيَجْزِيَ اللّٰهُ كُلَّ نَفْسٍ مَّا كَسَبَتْ ؕ اِنَّ اللّٰهَ سَرِيْعُ الْحِسَابِ ﴿٥١﴾

प्रतिदान दिन सकून् । निश्चय नै, अल्लाह शीघ्र हिसाब लिने गर्छन् ।

५२. मानवजातिको भलाइका निम्ति यो एउटा स्पष्टरूपमा घोषित सन्देश हो ताकि त्यसद्वारा तिनीहरूलाई सचेत गरियोस्, तथा उनी नै एकमात्र उपास्य रहेका छन् भनी तिनीहरूले जानून्, ताकि बुद्धिमान् व्यक्तिहरूले अर्ती लिन सकून् ।

هٰذَا بَلٰغٌ لِّلنَّاسِ وَلِيُنْذَرُوْا بِهٖ وَ
لِيَعْلَمُوْٓا اَنَّمَا هُوَ اِلٰهٌ وَّاحِدٌ وَّ
لِيَذَّكَّرَ اُولُوا الْاَلْبَابِ ﴿٥٢﴾

سُوْرَةُ الْحِجْرِ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ مِائَةُ اٰيَةٍ وَّسِتَّةُ رُكُوْعَاتٍ

## अल्-हिज्र
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु अल्लाहको नाममा ।

الٓرٰ تِلْكَ اٰيٰتُ الْكِتٰبِ وَ قُرْاٰنٍ مُّبِيْنٍ ②

२. अलिफ लाम रा* यी एउटा (महान) पुस्तक तथा सुष्पष्टकारी कुरानका आयातहरू हुन् ।

رُبَمَا يَوَدُّ الَّذِيْنَ كَفَرُوْا لَوْ كَانُوْا مُسْلِمِيْنَ ③

३. अविश्वासीहरू अनेकबार यदि तिनीहरू मुसलमान भएका भए (हुन्थ्यो) भन्ने अभिलाषा राख्नेछन् ।

ذَرْهُمْ يَاْكُلُوْا وَيَتَمَتَّعُوْا وَيُلْهِهِمُ الْاَمَلُ فَسَوْفَ يَعْلَمُوْنَ ④

४. तिनीहरूलाई (एक्लै) छाडिदेउ ताकि तिनीहरूले आफ्नो इच्छानुसार खाऊन तथा आनन्द उपभोग गरून् र तिनीहरूलाई मिथ्या अभिलाषाले अलमल्याओस्; परन्तु तिनीहरूले शीघ्र नै जान्नेछन् ।

وَمَآ اَهْلَكْنَا مِنْ قَرْيَةٍ اِلَّا وَلَهَا كِتَابٌ مَّعْلُوْمٌ ⑤

५. तथा हामीले कहिल्यै यस्तो नगरलाई ध्वंस पारेनौं जसका बारेमा पहिलादेखि नै एउटा स्पष्ट निर्णय रहेको नहोस् ।

مَا تَسْبِقُ مِنْ اُمَّةٍ اَجَلَهَا وَ مَا يَسْتَاْخِرُوْنَ ⑥

६. कुनै जातिले तिनीहरूको निर्धारित समयलाई नाघ्न सक्दैनन् न त तिनीहरू त्यसभन्दा पछि रहन नै सक्छन् ।

وَ قَالُوْا يٰٓاَيُّهَا الَّذِيْ نُزِّلَ عَلَيْهِ الذِّكْرُ اِنَّكَ لَمَجْنُوْنٌ ⑦

७. तथा तिनीहरूले भने, "ए त्यो व्यक्ति जसप्रति यो उपदेश अवतीर्ण गरिएको छ, तिमी त निस्सन्देह पागल रहेका छौ?

لَوْ مَا تَاْتِيْنَا بِالْمَلٰٓئِكَةِ اِنْ كُنْتَ مِنَ الصّٰدِقِيْنَ ⑧

८. यदि तिमी साँचा हौ भने हामीसमक्ष फरिस्ताहरूलाई किन प्रस्तुत गर्दैनौ त?

* म सर्वद्रष्टा अल्लाह हुँ ।

९. परन्तु सत्यका साथ हामी फरिस्ताहरूलाई अवतीर्ण गर्दैनौ, तथा त्यसपछि भने तिनीहरूलाई कुनै अवसर दिइँदैन ।

مَا نُنَزِّلُ الْمَلٰٓئِكَةَ اِلَّا بِالْحَقِّ وَمَا كَانُوْٓا اِذًا مُّنْظَرِيْنَ ٨

१०. वस्तुतः हामीले स्वयम् यस उपदेशलाई अवतीर्ण गरेका हौं, तथा हामी नै निश्चयपूर्वक यसको सुरक्षा गर्नेछौं ।

اِنَّا نَحْنُ نَزَّلْنَا الذِّكْرَ وَاِنَّا لَهٗ لَحٰفِظُوْنَ ٩

११. तथा हामीले तिमीभन्दा पहिला अतीतका जातिहरूका विभिन्न सम्प्रदायहरूमा सन्देशवाहकहरू पठाएका थियौं ।

وَلَقَدْ اَرْسَلْنَا مِنْ قَبْلِكَ فِيْ شِيَعِ الْاَوَّلِيْنَ ١٠

१२. तथा तिनीहरूसमक्ष कुनै यस्ता सन्देशवाहक आएनन् जसलाई तिनीहरूले ठट्टामा उडाएको नहोस् ।

وَمَا يَاْتِيْهِمْ مِّنْ رَّسُوْلٍ اِلَّا كَانُوْا بِهٖ يَسْتَهْزِءُوْنَ ١١

१३. यसैप्रकार हामी त्यस (ठट्टा गर्ने बानी)लाई पापी व्यक्तिहरूका हृदयमा दाखिल गर्ने गर्छौं;

كَذٰلِكَ نَسْلُكُهٗ فِيْ قُلُوْبِ الْمُجْرِمِيْنَ ١٢

१४. यद्यपि (तिनीहरूभन्दा पहिला) अतीतका मानिसहरूको दृष्टान्त तिनीहरूसमक्ष गुज्रिसकेको छ (तथापि) तिनीहरू त्यसप्रति विश्वास गर्दैनन् ।

لَا يُؤْمِنُوْنَ بِهٖ وَقَدْ خَلَتْ سُنَّةُ الْاَوَّلِيْنَ ١٣

१५. तथा यदि हामी तिनीहरूका लागि आकाशबाट ढोका नै खोल्थ्यौं र तिनीहरू त्यसबाट माथि चढ्न लाग्थे भने पनि,

وَلَوْ فَتَحْنَا عَلَيْهِمْ بَابًا مِّنَ السَّمَآءِ فَظَلُّوْا فِيْهِ يَعْرُجُوْنَ ١٤

१६. तिनीहरूले अवश्य के भन्ने थिए भने, "केवल हाम्रा नेत्रहरूलाई तिरमिर पारिएको हो; अपितु हामीमाथि जादु गरिएको छ ।"

لَقَالُوْٓا اِنَّمَا سُكِّرَتْ اَبْصَارُنَا بَلْ نَحْنُ قَوْمٌ مَّسْحُوْرُوْنَ ١٥

ع ٢

१७. वस्तुतः हामीले आकाशमा नक्षत्रकासमूह बनाएका छौं तथा जसले हेर्छन् उनीहरूका निम्ति त्यसलाई

وَلَقَدْ جَعَلْنَا فِي السَّمَآءِ بُرُوْجًا وَّزَيَّنّٰهَا لِلنّٰظِرِيْنَ ١٦

सौन्दर्यपूर्ण बनाएका छौं ।

وَحَفِظْنٰهَا مِنْ كُلِّ شَيْطٰنٍ رَّجِيْمٍ ﴿١٧﴾

१८. तथा हरेक तिरस्कृत सैतानबाट त्यसलाई सुरक्षित तुल्याएका छौं ।

إِلَّا مَنِ اسْتَرَقَ السَّمْعَ فَأَتْبَعَهٗ شِهَابٌ مُّبِيْنٌ ﴿١٨﴾

१९. परन्तु यदि कसैले लुकीचोरी सुन्छ भने, एउटा ज्वलन्त ज्वाला त्यसका पछि लाग्छ ।

وَالْأَرْضَ مَدَدْنٰهَا وَأَلْقَيْنَا فِيْهَا رَوَاسِيَ وَأَنْۢبَتْنَا فِيْهَا مِنْ كُلِّ شَيْءٍ مَّوْزُوْنٍ ﴿١٩﴾

२०. तथा हामीले पृथ्वीलाई फैलाएका छौं तथा त्यसमा स्थिर रहने पर्वतहरू खडा गरेका छौं र त्यहाँ उचित अनुपातमा हरेक वस्तुहरूलाई उत्पन्न गरी बढाएका छौं ।

وَجَعَلْنَا لَكُمْ فِيْهَا مَعَايِشَ وَمَنْ لَّسْتُمْ لَهٗ بِرٰزِقِيْنَ ﴿٢٠﴾

२१. तथा हामीले त्यहाँ तिमीहरूका निम्ति तथा ती (सबै) प्राणीहरूका निम्ति (पनि) जसलाई तिमीहरूले खाद्यान्न दिँदैनौं, जीविकाका साधानहरूको सिर्जना गरेका छौं ।

وَإِنْ مِّنْ شَيْءٍ إِلَّا عِنْدَنَا خَزَآئِنُهٗ وَمَا نُنَزِّلُهٗٓ إِلَّا بِقَدَرٍ مَّعْلُوْمٍ ﴿٢١﴾

२२. तथा कुनै यस्तो वस्तु छैन जसका खजानाहरू हामीसित नहुन परन्तु त्यसलाई हामी निर्धारित परिमाणमा मात्र अवतीर्ण गर्नेछैनौं ।

وَأَرْسَلْنَا الرِّيٰحَ لَوَاقِحَ فَأَنْزَلْنَا مِنَ السَّمَآءِ مَآءً فَأَسْقَيْنٰكُمُوْهُ وَمَآ أَنْتُمْ لَهٗ بِخٰزِنِيْنَ ﴿٢٢﴾

२३. तथा हामी भार वहन गर्ने हावा पठाउँछौं, त्यसपछि बादलबाट हामी पानी बर्साउँछौं, अतः त्यो पानी तिमीहरूलाई पिउनका निम्ति हामी प्रदान गर्छौं । तथा त्यसलाई तिमीहरू सङ्ग्रह गर्न सक्दैनौ

وَإِنَّا لَنَحْنُ نُحْيٖ وَنُمِيْتُ وَنَحْنُ الْوٰرِثُوْنَ ﴿٢٣﴾

२४. तथा हामी नै वास्तवमा जीवन दानकर्ता हौं र मृत्यु प्रदानकर्ता (पनि) हामी नै हौं, तथा हामी नै (एकमात्र सबैका) उत्तराधिकारी रहेका छौं ।

وَلَقَدْ عَلِمْنَا الْمُسْتَقْدِمِيْنَ مِنْكُمْ وَلَقَدْ عَلِمْنَا الْمُسْتَأْخِرِيْنَ ﴿٢٤﴾

२५. तथा तिमीहरूमध्ये अघि जाने व्यक्तिहरूलाई हामी चिन्छौं भने,

तिमीहरूमध्ये पछि रहने व्यक्तिहरूलाई (पनि) हामी चिन्दछौं ।

وَإِنَّ رَبَّكَ هُوَ يَحْشُرُهُمْ ۚ إِنَّهُ حَكِيمٌ عَلِيمٌ ﴿٢٥﴾

२६. तथा निश्चय नै, ती तिम्रा प्रतिपालक नै हुन् जसले तिनीहरू सबैलाई एकत्रित गर्नेछन् । निःस्सन्देह उनी तत्त्वज्ञ, सर्वज्ञ रहेका छन् ।

وَلَقَدْ خَلَقْنَا الْإِنسَانَ مِن صَلْصَالٍ مِّنْ حَمَإٍ مَّسْنُونٍ ﴿٢٦﴾

२७. तथा निश्चय नै, मानिसलाई हामीले जमेको हिलो (को आकृति परिवर्तन गरी) सुकेको बज्ने माटोबाट सृष्टि गरेका हौं ।

وَالْجَانَّ خَلَقْنَاهُ مِن قَبْلُ مِن نَّارِ السَّمُومِ ﴿٢٧﴾

२८. तथा जिन्नलाई हामीले त्यसभन्दा पहिला दन्कदो हावाको अग्निबाट सृष्टि गरेका थियौं ।

وَإِذْ قَالَ رَبُّكَ لِلْمَلَائِكَةِ إِنِّي خَالِقٌ بَشَرًا مِّن صَلْصَالٍ مِّنْ حَمَإٍ مَّسْنُونٍ ﴿٢٨﴾

२९. तथा (स्मरण गर) जब तिम्रा प्रतिपालकले फरिस्ताहरूसित भनेका थिए, "म आकृति परिवर्तन भएको कालो हिलोबाट सुकेर बज्ने प्रकृति भएको, माटोबाट मानिस सिर्जना गर्न लागिरहेछु;

فَإِذَا سَوَّيْتُهُ وَنَفَخْتُ فِيهِ مِن رُّوحِي فَقَعُوا لَهُ سَاجِدِينَ ﴿٢٩﴾

३०. "अतः जब म त्यसलाई (सर्वाङ्ग) स्वरूप प्रदान गर्नेछु तथा त्यसभित्र मेरो आत्माबाट श्वास फुक्नेछु, (तब) तिमीहरू त्यसका निम्ति आज्ञाकारीस्वरूप नतमस्तक हुनू ।

فَسَجَدَ الْمَلَائِكَةُ كُلُّهُمْ أَجْمَعُونَ ﴿٣٠﴾

३१. अतः सबै फरिस्ताहरूले एकसाथ आज्ञाकारिता अवलम्बन गरे,

إِلَّا إِبْلِيسَ أَبَىٰ أَن يَكُونَ مَعَ السَّاجِدِينَ ﴿٣١﴾

३२. इब्लिसले बाहेक; उसले नतमस्तक गर्नेहरूसित सामेल हुन अस्वीकार गऱ्यो ।

قَالَ يَا إِبْلِيسُ مَا لَكَ أَلَّا تَكُونَ مَعَ السَّاجِدِينَ ﴿٣٢﴾

३३. (अल्लाहले) भने, "ए इब्लिस, तँलाई के भएको छ र तँ ती आज्ञापालन गर्नेहरूसित सामेल हुँदैनस् ?"

قَالَ لَمْ أَكُن لِّأَسْجُدَ لِبَشَرٍ خَلَقْتَهُ مِن صَلْصَالٍ مِّنْ حَمَإٍ مَّسْنُونٍ ﴿٣٣﴾

३४. उसले उत्तर दियो, "म मानिसको आज्ञाकारी बन्नेछैन जसलाई तिमीले आकृति परिवर्तन भएको कालो हिलोबाट सुकेर बज्ने प्रकृति भएको माटोबाट सृष्टि गरेकाछौ ।"

قَالَ فَاخْرُجْ مِنْهَا فَإِنَّكَ رَجِيمٌ ﴿٣٤﴾

३५. (अल्लाहले) भने, "त्यसोभए यहाँबाट निस्केर जा, किनभने तँ निश्चय नै तिरस्कृत रहेको छस् ।

وَإِنَّ عَلَيْكَ اللَّعْنَةَ إِلَىٰ يَوْمِ الدِّينِ ﴿٣٥﴾

३६. "तथा निश्चय नै, निर्णयका दिनसम्म तँमाथि (मेरो) श्राप रहनेछ ।"

قَالَ رَبِّ فَأَنظِرْنِي إِلَىٰ يَوْمِ يُبْعَثُونَ ﴿٣٦﴾

३७. उसले भन्यो, "हे मेरा प्रतिपालक, त्यसोभए मलाई तिनीहरूको पुनरुत्थानको दिनसम्मका निम्ति अवसर प्रदान गर ।"

قَالَ فَإِنَّكَ مِنَ الْمُنظَرِينَ ﴿٣٧﴾

३८. (अल्लाहले) भने, "तँ अवसर प्राप्त व्यक्तिहरूमध्ये हुनेछस्,

إِلَىٰ يَوْمِ الْوَقْتِ الْمَعْلُومِ ﴿٣٨﴾

३९. "निर्धारित म्यादको दिनसम्मका निम्ति ।"

قَالَ رَبِّ بِمَا أَغْوَيْتَنِي لَأُزَيِّنَنَّ لَهُمْ فِي الْأَرْضِ وَلَأُغْوِيَنَّهُمْ أَجْمَعِينَ ﴿٣٩﴾

४०. उसले उत्तर दियो, "हे मेरा प्रतिपालक, जब तिमीले मलाई पथभ्रष्ट घोषित गरी नै हाल्यौ भने, म (पनि) यस धर्तीमा (अपकर्म) तिनीहरूलाई निश्चय नै सुन्दर तुल्याइ (देखाउने) छु तथा तिनीहरू सबैलाई म पथभ्रष्ट तुल्याउनेछु,

إِلَّا عِبَادَكَ مِنْهُمُ الْمُخْلَصِينَ ﴿٤٠﴾

४१. तिनीहरूमध्ये तिमीले छानेका तिम्रा सेवकहरूबाहेक ।"

قَالَ هَٰذَا صِرَاطٌ عَلَيَّ مُسْتَقِيمٌ ﴿٤١﴾

४२. (अल्लाहले) भने, "सोभै मतर्फ (आउने) यही नै सन्मार्ग हो ।

إِنَّ عِبَادِي لَيْسَ لَكَ عَلَيْهِمْ سُلْطَانٌ إِلَّا مَنِ اتَّبَعَكَ مِنَ الْغَاوِينَ ﴿٤٢﴾

४३. "निश्चय नै, यस्ता पथभ्रष्ट व्यक्तिहरूबाहेक जसले स्वयम् तेरो अनुसरण गर्न (रोज्दछन्), मेरा सेवकहरू

माथि भने तेरो कुनै हैकम चल्नेछैन ।"

वَإِنَّ جَهَنَّمَ لَمَوْعِدُهُمْ أَجْمَعِينَ ﴿٤٤﴾

४४. तथा, निश्चय नै तिनीहरू सबैको प्रतिश्रुत स्थान नर्क रहेको छ ।

لَهَا سَبْعَةُ أَبْوَابٍ لِّكُلِّ بَابٍ مِّنْهُمْ جُزْءٌ مَّقْسُومٌ ﴿٤٥﴾

४५. त्यसका सातवटा ढोकाहरू रहेका छन्; (तथा) प्रत्येक ढोकाका निम्ति तिनीहरूको विभाजित एउटा अंश हुनेछ ।

إِنَّ الْمُتَّقِينَ فِي جَنَّاتٍ وَعُيُونٍ ﴿٤٦﴾

४६. वस्तुतः अल्लाहभीरु व्यक्तिहरू बगैंचाहरू तथा झरनाहरू (भएका स्थानमा) दाखिल हुनेछन् ।

ادْخُلُوهَا بِسَلَامٍ آمِنِينَ ﴿٤٧﴾

४७. "तिमीहरू त्यहाँ शान्ति र सुरक्षाका साथ प्रवेश गर ।"

وَنَزَعْنَا مَا فِي صُدُورِهِم مِّنْ غِلٍّ إِخْوَانًا عَلَىٰ سُرُرٍ مُّتَقَابِلِينَ ﴿٤٨﴾

४८. तथा तिनीहरूका छातीमा रहेको सम्पूर्ण द्वेषभावलाई हामी निकालेर फ्याँक्नेछौं (फलस्वरूप तिनीहरू) परस्पर दाजु-भाइ स्वरूप सिरानीमा ढल्किएर आमुन्ने सामुन्ने (विराजमान) हुनेछन् ।

لَا يَمَسُّهُمْ فِيهَا نَصَبٌ وَمَا هُم مِّنْهَا بِمُخْرَجِينَ ﴿٤٩﴾

४९. त्यहाँ तिनीहरूलाई थकाइ लाग्नेछैन, न त तिनीहरूलाई त्यहाँबाट (कहिल्यै) निष्कासन गरिनेछ ।

نَبِّئْ عِبَادِي أَنِّي أَنَا الْغَفُورُ الرَّحِيمُ ﴿٥٠﴾

५०. म निःसन्देह परम क्षमाशील, परम दानशील रहेको छु भनी मेरा सेवकहरूलाई भनिदेउ;

وَأَنَّ عَذَابِي هُوَ الْعَذَابُ الْأَلِيمُ ﴿٥١﴾

५१. तथा मेरो दण्ड (पनि) अति नै कठोर दण्ड रहेको छ (भनिदेउ)

وَنَبِّئْهُمْ عَن ضَيْفِ إِبْرَاهِيمَ ﴿٥٢﴾

५२. तथा इब्राहिमका अतिथिहरूबारे तिनीहरूलाई सुनाउ ।

إِذْ دَخَلُوا عَلَيْهِ فَقَالُوا سَلَامًا قَالَ إِنَّا مِنكُمْ وَجِلُونَ ﴿٥٣﴾

५३. जब तिनीहरूले उनीसमक्ष उपस्थित भएर भने, "शान्ति," उनले उत्तर दिए,

"वस्तुतः, हामी तिमीहरूबाट डराइरहेछौं ।"

قَالُوْا لَا تَوْجَلْ اِنَّا نُبَشِّرُكَ بِغُلٰمٍ عَلِيْمٍ ﴿٥٣﴾

५४. तिनीहरूले भने, "तिमी नडराउ, हामी तिमीलाई एउटा (यस्तो) पुत्रको शुभसन्देश दिन्छौं (जो) ज्ञानवान (हुनेछ) ।"

قَالَ اَبَشَّرْتُمُوْنِيْ عَلٰۤى اَنْ مَّسَّنِيَ الْكِبَرُ فَبِمَ تُبَشِّرُوْنَ ﴿٥٤﴾

५५. उनले भने, "बुढेसकालले मलाई घेरेको जानी जानी (पनि) के तिमीहरू मलाई शुभसन्देश दिन्छौ? कुन कुराको शुभसन्देश तिमीहरू मलाई दिन्छौ त?"

قَالُوْا بَشَّرْنٰكَ بِالْحَقِّ فَلَا تَكُنْ مِّنَ الْقٰنِطِيْنَ ﴿٥٥﴾

५६. तिनीहरूले भने, "निस्सन्देह हामीले तिमीलाई सत्यमा आधारित शुभसन्देश दिएका छौं; त्यसकारण तिमी निराश हुने व्यक्तिहरू- मध्येका नबन ।"

قَالَ وَمَنْ يَّقْنَطُ مِنْ رَّحْمَةِ رَبِّهٖۤ اِلَّا الضَّآلُّوْنَ ﴿٥٦﴾

५७. उनले भने, "तथा पथभ्रष्ट व्यक्तिहरूबाहेक अन्य कोचाहिँ आफ्ना प्रतिपालकको कृपाबाट निराश हुनसक्छ र?"

قَالَ فَمَا خَطْبُكُمْ اَيُّهَا الْمُرْسَلُوْنَ ﴿٥٧﴾

५८. उनले भने, "हे सन्देशवाहकहरू हो, (अब) तिमीहरूको के काम छ त?"

قَالُوْۤا اِنَّاۤ اُرْسِلْنَاۤ اِلٰى قَوْمٍ مُّجْرِمِيْنَ ﴿٥٨﴾

५९. तिनीहरूले भने, "हामीलाई एउटा दोषी जातितर्फ पठाइएको छ ।"

اِلَّاۤ اٰلَ لُوْطٍؕ اِنَّا لَمُنَجُّوْهُمْ اَجْمَعِيْنَ ﴿٥٩﴾

६०. "लूतका ती परिवारबाहेक, तिनीहरू सबैलाई हामी बचाउनेछौं,

اِلَّا امْرَاَتَهٗ قَدَّرْنَاۤ ۙ اِنَّهَا لَمِنَ الْغٰبِرِيْنَ ﴿٦٠﴾

६१. "उनकी पत्नीबाहेक । तिनीचाहिँ पछिरहने व्यक्तिहरूमा सामेल हुनेछिन् भन्ने हाम्रो अनुमान रहेको छ ।

فَلَمَّا جَآءَ اٰلَ لُوْطِ ِۨالْمُرْسَلُوْنَ ﴿٦١﴾

६२. तथा जब लूतका परिवारसमक्ष ती सन्देशबाहकहरू उपस्थित भए,

قَالَ اِنَّكُمْ قَوْمٌ مُّنْكَرُوْنَ ﴿٦٢﴾

६३. तिनीहरूले भने, "वस्तुतः तिमीहरू

अपरिचित मानिसहरूको समूह हौ ।

قَالُوْا بَلْ جِئْنٰكَ بِمَا كَانُوْا فِيْهِ يَمْتَرُوْنَ ﴿٦٣﴾

६४. तिनीहरूले भने, "होइन, अपितु हामी तिमीसमक्ष त्यो कुरा लिएर आएका छौं जसका सम्बन्धमा तिनीहरूले सन्देह गर्ने गर्थे ।

وَاَتَيْنٰكَ بِالْحَقِّ وَاِنَّا لَصٰدِقُوْنَ ﴿٦٤﴾

६५. "तथा हामी तिमीसमक्ष सत्यकासाथ आएका छौं, तथा हामी निःसन्देह सत्यवादी रहेकाछौं ।

فَاَسْرِ بِاَهْلِكَ بِقِطْعٍ مِّنَ الَّيْلِ وَاتَّبِعْ اَدْبَارَهُمْ وَلَا يَلْتَفِتْ مِنْكُمْ اَحَدٌ وَّامْضُوْا حَيْثُ تُؤْمَرُوْنَ ﴿٦٥﴾

६६. "त्यसकारण तिमी आफ्ना परिवारका साथमा रात्रिको अन्तिम प्रहरमा प्रस्थान गर तथा तिमी तिनीहरूका पछि पछि लागेर हिड । तथा तिमीहरूमध्ये कसैले पनि पछि फर्किएर नहेरोस्, र तिमीहरूलाई जहाँ जाने आदेश भएको छ (अब) त्यतै अघि बढ ।"

وَقَضَيْنَآ اِلَيْهِ ذٰلِكَ الْاَمْرَ اَنَّ دَابِرَ هٰٓؤُلَآءِ مَقْطُوْعٌ مُّصْبِحِيْنَ ﴿٦٦﴾

६७. तथा तिनीहरूको मूल बिहानीपख काटिनेछ भन्ने निर्णयद्वारा हामीले उनलाई सूचित गर्‍यौं ।

وَجَآءَ اَهْلُ الْمَدِيْنَةِ يَسْتَبْشِرُوْنَ ﴿٦٧﴾

६८. तथा नगरवासीहरू हर्षोल्लासकासाथ उपस्थित भए ।

قَالَ اِنَّ هٰٓؤُلَآءِ ضَيْفِيْ فَلَا تَفْضَحُوْنِ ﴿٦٨﴾

६९. उनले भने, "यिनीहरू मेरा अतिथिहरू हुन्, त्यसकारण मलाई लज्जित नतुल्याऊ"

وَاتَّقُوا اللّٰهَ وَلَا تُخْزُوْنِ ﴿٦٩﴾

७०. "तथा अल्लाहप्रति डराऊ र मेरो अपमान नगर ।"

قَالُوْٓا اَوَلَمْ نَنْهَكَ عَنِ الْعٰلَمِيْنَ ﴿٧٠﴾

७१. तिनीहरूले भने, "जसतसलाई (सत्कार नगर्नु भनी) हामीले तिमीलाई निषेध गरेका थिएनौ र?"

قَالَ هٰٓؤُلَآءِ بَنٰتِيْٓ اِنْ كُنْتُمْ فٰعِلِيْنَ ﴿٧١﴾

७२. उनले भने, "यदि तिमीहरूको केही गर्ने अभिलाषा छ भने यी मेरी छोरीहरू पनि) यहाँ (उभिएका) छन् (भन्ने कुरालाई

ध्यानमा राख) ।"

لَعَمْرُكَ إِنَّهُمْ لَفِي سَكْرَتِهِمْ يَعْمَهُونَ ﴿٧٣﴾

७३. तिम्रो जीवनको शपथ, तिनीहरू (पनि) आफ्नो (पागलपनपूर्ण) नशामा विभ्रान्त भइरहेका छन्-

فَأَخَذَتْهُمُ الصَّيْحَةُ مُشْرِقِينَ ﴿٧٤﴾

७४. तब त्यस सजायँले तिनीहरूलाई सूर्योदय हुनासाथै समात्यो ।

فَجَعَلْنَا عَالِيَهَا سَافِلَهَا وَأَمْطَرْنَا عَلَيْهِمْ حِجَارَةً مِّن سِجِّيلٍ ﴿٧٥﴾

७५. हामीले त्यसको माथिल्लो सतहलाई तल्लो सतहमा परिणत गऱ्यौं, तथा हामीले तिनीहरूमाथि छारोले बनेका ढुङ्गाको वर्षा बर्सायौं ।

إِنَّ فِي ذَٰلِكَ لَآيَاتٍ لِّلْمُتَوَسِّمِينَ ﴿٧٦﴾

७६. निश्चय नै, जसले (चिह्नहरूको) अध्ययन गर्न सक्छ, तिनीहरूका निम्ति यसमा चिह्नहरू रहेका छन् ।

وَإِنَّهَا لَبِسَبِيلٍ مُّقِيمٍ ﴿٧٧﴾

७७. तथा त्यो (हालसम्म) स्थित मार्गमा अवस्थित रहेको छ ।

إِنَّ فِي ذَٰلِكَ لَآيَةً لِّلْمُؤْمِنِينَ ﴿٧٨﴾

७८. विश्वासीजनका निम्ति यसमा अवश्य एउटा चिह्न रहेको छ ।

وَإِن كَانَ أَصْحَابُ الْأَيْكَةِ لَظَالِمِينَ ﴿٧٩﴾

७९. तथा अरण्यनिवासीहरू (पनि) अवश्य अत्याचारी व्यक्तिहरू थिए ।

فَانتَقَمْنَا مِنْهُمْ ۘ وَإِنَّهُمَا لَبِإِمَامٍ مُّبِينٍ ﴿٨٠﴾

८०. त्यसकारण हामीले तिनीहरूलाई दण्ड दियौं । तथा ती दुबै सुप्रख्यात मार्गमा (पुरिएको अवस्थामा) रहेका छन् ।

وَلَقَدْ كَذَّبَ أَصْحَابُ الْحِجْرِ الْمُرْسَلِينَ ﴿٨١﴾

८१. तथा हिज्र निवासीहरूले (पनि) सन्देशवाहक- हरूसित मिथ्यावादी व्यक्तिहरूसरह व्यवहार गरेका थिए ।

وَآتَيْنَاهُمْ آيَاتِنَا فَكَانُوا عَنْهَا مُعْرِضِينَ ﴿٨٢﴾

८२. तथा हामीले तिनीहरूलाई आफ्ना चिह्नहरू प्रदान गरेका थियौं, परन्तु तिनीहरू ती (चिह्न) हरूबाट विमुख

हुनपुगे ।

८३. तथा तिनीहरू सुरक्षाकासाथ पहाडहरू खोपेर घरहरू निर्माण गर्ने गर्थे

وَكَانُوْا يَنْحِتُوْنَ مِنَ الْجِبَالِ بُيُوْتًا اٰمِنِيْنَ ﴿٨٢﴾

८४. परन्तु बिहानीपख तिनीहरूलाई दण्डले समात्यो,

فَاَخَذَتْهُمُ الصَّيْحَةُ مُصْبِحِيْنَ ﴿٨٣﴾

८५. तथा तिनीहरूले कमाएको कुनै वस्तुले तिनीहरूलाई केही लाभ पुऱ्याएन ।

فَمَآ اَغْنٰى عَنْهُمْ مَّا كَانُوْا يَكْسِبُوْنَ ﴿٨٤﴾

८६. तथा आकाशमण्डल र पृथ्वी तथा ती दुवैबीच रहेका (सम्पूर्ण) वस्तुहरूलाई हामीले सत्यमा आधारित सृष्टि गरेका छौं; तथा त्यो घडी अवश्य आउने नै छ । अत:तिमी (तिनीहरूबाट) सहृदय अलग होउ ।

وَمَا خَلَقْنَا السَّمٰوٰتِ وَالْاَرْضَ وَمَا بَيْنَهُمَآ اِلَّا بِالْحَقِّ ۗ وَاِنَّ السَّاعَةَ لَاٰتِيَةٌ فَاصْفَحِ الصَّفْحَ الْجَمِيْلَ ﴿٨٥﴾

८७. वस्तुत: तिम्रा प्रतिपालक नै महान सृष्टिकर्ता, सर्वज्ञ रहेका छन् ।

اِنَّ رَبَّكَ هُوَ الْخَلّٰقُ الْعَلِيْمُ ﴿٨٦﴾

८८. तथा तिमीलाई हामीले निस्सन्देह सातवटा बारम्बार दोहोऱ्याइने आयातहरू र महान कुरान प्रदान गरेका छौं ।

وَلَقَدْ اٰتَيْنٰكَ سَبْعًا مِّنَ الْمَثَانِيْ وَالْقُرْاٰنَ الْعَظِيْمَ ﴿٨٧﴾

८९. तिनीहरूमध्ये केही वर्गलाई हामीले प्रदान गरेको क्षणिक आनन्द उपभोगतर्फ तिमी (लालचले) आँखा नगाढ तथा तिनीहरूप्रति दुखित नहोउ, तथा विश्वासीहरूका निम्ति आफ्ना (करुणाका) पङ्खहरू झुकाएर राख ।

لَا تَمُدَّنَّ عَيْنَيْكَ اِلٰى مَا مَتَّعْنَا بِهٖٓ اَزْوَاجًا مِّنْهُمْ وَلَا تَحْزَنْ عَلَيْهِمْ وَاخْفِضْ جَنَاحَكَ لِلْمُؤْمِنِيْنَ ﴿٨٨﴾

९०. तथा तिमी भन, "म त निस्सन्देह एउटा सचेतक हुँ ।"

وَقُلْ اِنِّيْٓ اَنَا النَّذِيْرُ الْمُبِيْنُ ﴿٨٩﴾

९१. सदा झैं "हामी ती व्यक्तिहरूमाथि दण्ड अवतीर्ण गर्नेछौं जुन व्यक्तिहरू विभिन्न समूहमा विभाजित हुन्छन् ।

كَمَآ اَنْزَلْنَا عَلَى الْمُقْتَسِمِيْنَ ﴿٩٠﴾

ٱلَّذِينَ جَعَلُوا۟ ٱلْقُرْءَانَ عِضِينَ ﴿٩١﴾

९२. (तथा) जसले पवित्र कुरानलाई टुक्रा-टुक्रा गर्न चाहन्छन्* ।

فَوَرَبِّكَ لَنَسْـَٔلَنَّهُمْ أَجْمَعِينَ ﴿٩٢﴾

९३. अतः तिम्रा प्रतिपालकको शपथ, हामी तिनीहरू सबैसित निश्चय नै प्रश्न गर्नेछौं

عَمَّا كَانُوا۟ يَعْمَلُونَ ﴿٩٣﴾

९४. जुन कार्यहरू तिनीहरूले गर्नेगर्थे त्यस सम्बन्धमा ।

---

* टिप्पणीः हामी आयात (८८-९२) लाई भूतकालको सट्टा भविष्यकालमा अनुवाद गर्नुलाई प्राथमिकता दिन्छौं । किनभने तिनीहरूमा मुसलमानहरूका निम्ति एउटा गम्भीर चेतावनी रहेको छ भन्ने हाम्रो धारणा छ । भविष्यको घटना दर्शाउन भूतकाल किन प्रयोग गरिन्छ भनी आश्चर्य गर्नुपर्ने केही कुरो छैन, किनभने पवित्र कुरानमा धेरैजसो यस्ता भविष्यवाणीहरू छन् जुन हरहालतमा पूर्ण हुने प्रकारका छन् र भूतकालमा वर्णन गरिएका छन् । अतीत अपरिवर्तनीय हुन्छ । भूतकालमा वर्णन भएका भविष्यवाणीहरू निश्चयसूचक हुन्छन् । अतः निम्नानुसार अनुवाद हुनेछः

"हामीले निस्सन्देह तिमीलाई सातवटा बारम्बार दोहाऱ्याइने (आयतहरू) तथा महान कुरान प्रदान गरेका छौं । तिनीहरूमध्ये विभिन्न वर्गलाई हामीले प्रदान गरेको क्षणिक आनन्द उपभोगतर्फ (लालसापूर्वक) आँखा नगाढ, तथा तिनीहरूप्रति दुखित नहोउ; तथा विशवासीहरूका निम्ति आफ्ना (करुणाका) पङ्खहरू झुकाएर राख । तथा तिमी भन, म त निस्सन्देह एउटा सचेतक हुँ । सदाझैं हामी ती व्यक्तिहरूमाथि दण्ड अवतीर्ण गर्नेछौं जुन व्यक्तिहरू विभिन्न गुटमा विभाजित भएका छन् तथा जसले पवित्र कुरानलाई टुक्रा-टुक्रा पार्न चाहन्छन् ।"

जब हामी उपरोक्त आयतहरूको विषयवस्तुमाथि दृष्टि गरी गुज्रेका आयतहरू एउटा महान पुस्तकस्वरूप पवित्र कुरानको अनौठो परिचयका साथ प्रारम्भ भएका आविष्कार गर्छौं स्पप्टतयाः उक्त अनुवाद अधिक उपयुक्त प्रमाणित हुन जान्छ । अतः ती सम्पूर्ण मानिसहरू जसले पवित्र कुरानको (आज्ञाका) अधीनस्थ रहनु सट्टा त्यसको केन्द्रविन्दुस्वरूप रहेको एकताको मुख्य सन्देशलाई नै अपमानित गर्छन्, तथा विभिन्न गुटमा विभाजित भइ आफूले गरेको व्याख्यालाई शुद्ध प्रमाणित गर्नका निम्ति, अन्तमा कुरानलाई नै व्यवहारिक रूपमा टुक्रा-टुक्रा पार्छन्; हरेक समुहले केही आयतहरूको व्याख्या आफ्नो हित अनुसारको गरी त्यसैमा टाँसिन्छन्, जुन (व्याख्या) ती अन्य (गुट)हरूको विपरीत हुन्छ, जसले अन्य केही आयतहरूको व्याख्या तिनीहरूको आफ्नो हितानुसार गरी त्यसैमा टाँसिन्छन् । उक्त विभाजनको वर्णन एउटा तीक्ष्ण (सत्य) स्वरूप भएको छ तथा त्यसको परिणामस्वरूप विभिन्न सङ्घर्षरत गुटहरूमा सम्झौताको कुनै सम्भावना शेप रहँदैन । त्यसले एउटै उम्मा (जाति) का मानिसहरूलाई विभिन्न गुटमा विभाजित गरेको छ, तथा त्यही प्रक्रियाबाट पवित्र कुरान टुक्रा-टुक्रामा विभाजित हुन पुगेको छ ।

فَاصْدَعْ بِمَا تُؤْمَرُ وَاَعْرِضْ عَنِ الْمُشْرِكِيْنَ ﴿٩٤﴾

९५. अतः जुन कुराको तिमीलाई आदेश दिइएको छ त्यसलाई खुल्लारूपमा घोषित गर तथा जसले (अल्लाहका) भागीदार तुल्याउने गर्छन् तिनीहरूबाट अलग्गै रहने गर ।

اِنَّا كَفَيْنٰكَ الْمُسْتَهْزِءِيْنَ ﴿٩٥﴾

९६. जसले ठट्टा गर्ने गर्छन् तिनीहरू विरुद्ध अवश्य हामी तिम्रा निम्ति पर्याप्त रहनेछौं ।

الَّذِيْنَ يَجْعَلُوْنَ مَعَ اللّٰهِ اِلٰهًا اٰخَرَ فَسَوْفَ يَعْلَمُوْنَ ﴿٩٦﴾

९७. जसले अल्लाहसित अन्य उपास्य तुल्याएका छन्, परन्तु शीघ्र नै तिनीहरूले (वास्तविकता) जान्नेछन् ।

وَلَقَدْ نَعْلَمُ اَنَّكَ يَضِيْقُ صَدْرُكَ بِمَا يَقُوْلُوْنَ ﴿٩٧﴾

९८. तथा तिनीहरूका कुराबाट तिम्रो छाती सङ्कीर्ण हुन जान्छ भन्ने कुरा हामी निश्चयपूर्वक जान्दछौं ।

فَسَبِّحْ بِحَمْدِ رَبِّكَ وَكُنْ مِّنَ السّٰجِدِيْنَ ﴿٩٨﴾

९९. अतः तिमी प्रशंसाका साथ आफ्ना प्रतिपालकको पवित्रता वर्णन गर, तथा ती व्यक्तिहरूमा सामेल होउ जसले (उनीसमक्ष) साष्टाङ्ग दण्डवत गर्ने गर्छन् ।

وَاعْبُدْ رَبَّكَ حَتّٰى يَاْتِيَكَ الْيَقِيْنُ ﴿٩٩﴾ ع

१००. तथा तिम्रो मृत्युको घडी नआउञ्जेलसम्म निरन्तर आफ्ना प्रतिपालकको उपासना गर्दै जाउ ।




## अल्-नह्ल
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ﴿١﴾

१. परम कृपालु, परम दयालु अल्लाहको नाममा ।

اَتٰۤى اَمْرُ اللّٰهِ فَلَا تَسْتَعْجِلُوْهُ ؕ سُبْحٰنَهٗ وَتَعٰلٰى عَمَّا يُشْرِكُوْنَ ﴿٢﴾

२. अल्लाहको निर्देश आइरहेछ, त्यसकारण तिमीहरू त्यसको शीघ्र आगमनको कामना नगर । उनी पवित्र छन्, तथा जसलाई तिनीहरू (उनका) सहभागी बनाउँछन् ती सबैबाट उनी धेरैमाथि रहेका छन् ।

يُنَزِّلُ الْمَلٰٓئِكَةَ بِالرُّوْحِ مِنْ اَمْرِهٖ عَلٰى مَنْ يَّشَآءُ مِنْ عِبَادِهٖۤ اَنْ اَنْذِرُوْۤا اَنَّهٗ لَاۤ اِلٰهَ اِلَّاۤ اَنَا فَاتَّقُوْنِ ﴿٣﴾

३. आफ्ना सेवकहरूमध्ये जसलाई उनी चाहन्छन् त्यसमाथि फरिस्ताहरूलाई आकाशवाणीका साथ आफ्नो आदेशद्वारा (के भन्दै) अवतीर्ण गर्छन् भने, "मबाहेक अन्य कोही उपास्य छैन, त्यसकारण केवल मसित डराऊ भनी मानिसहरूलाई सतर्क गर ।"

خَلَقَ السَّمٰوٰتِ وَالْاَرْضَ بِالْحَقِّ ؕ تَعٰلٰى عَمَّا يُشْرِكُوْنَ ﴿٤﴾

४. उनले आकाशमण्डल र पृथ्वीलाइ तत्त्वज्ञानको आवश्यकतानुसार सिर्जना गरेका छन् । जसलाई तिनीहरू (उनका) भागीदार तुल्याउँछन् ती सबै कुराहरूबाट उनी अति उच्च रहेका छन् ।

خَلَقَ الْاِنْسَانَ مِنْ نُّطْفَةٍ فَاِذَا هُوَ خَصِيْمٌ مُّبِيْنٌ ﴿٥﴾

५. मानिसलाई उनले एउटा वीर्यको थोपोद्वारा सिर्जना गरे, परन्तु हेर ! उ त एउटा खुल्लमखुल्ला झगडालु बन्नपुग्छ ।

وَالْاَنْعَامَ خَلَقَهَا ۚ لَكُمْ فِيْهَا دِفْءٌ وَّمَنَافِعُ وَمِنْهَا تَاْكُلُوْنَ ﴿٦﴾

६. तथा उनले चौपायाको (पनि) सिर्जना गरेका छन्; तिनीहरूमा तिमीहरू गर्मी तथा धेरै लाभहरू प्राप्त गर्छौ; तथा तिनीहरूमध्ये केहीलाई तिमीहरू खाने गर्छौ ।

وَلَكُمْ فِيْهَا جَمَالٌ حِيْنَ تُرِيْحُوْنَ وَحِيْنَ تَسْرَحُوْنَ ﴿٧﴾

७. तथा जब तिमीहरू (तिनीहरूलाई) बेलुकी घरमा लिएर आउँछौ, र जब बिहान

(तिनीहरूलाई) लिएर चराउन जान्छौ त्यस क्रममा तिमीहरूका निम्ति तिनीहरूमा एक प्रकारको सौन्दर्य रहेको हुन्छ ।

वَتَحْمِلُ اَثْقَالَكُمْ اِلٰى بَلَدٍ لَّمْ تَكُوْنُوْا بٰلِغِيْهِ اِلَّا بِشِقِّ الْاَنْفُسِ ؕ اِنَّ رَبَّكُمْ لَرَءُوْفٌ رَّحِيْمٌ ۟ۙ (٧)

८. तथा तिनीहरूले तिमीहरूका भारीहरू त्यस नगरसम्म (बोकेर) पुऱ्याउँछन्, जहाँसम्म स्वयम्ले अथक परिश्रम नगरी तिमीहरू पुग्न सक्दैनथ्यौ । तिमीहरूका प्रतिपालक निस्सन्देह परम स्नेहशील, परम दानशील रहेका छन् ।

وَّالْخَيْلَ وَالْبِغَالَ وَالْحَمِيْرَ لِتَرْكَبُوْهَا وَزِيْنَةً ؕ وَيَخْلُقُ مَا لَا تَعْلَمُوْنَ (٨)

९. तथा (उनले) घोडाहरू र खच्चरहरू तथा गधाहरू तिमीहरूका सवारीका निम्ति, तथा सौन्दर्य(का साधन)स्वरूप (सृष्टि गरेका छन्) । तथा उनले ती वस्तुहरू सृष्टि गर्नेछन् जसबारे तिमीहरूलाई (अहिलेसम्म) ज्ञान छैन ।

وَعَلَى اللّٰهِ قَصْدُ السَّبِيْلِ وَمِنْهَا جَآئِرٌ ؕ وَلَوْ شَآءَ لَهَدٰىكُمْ اَجْمَعِيْنَ (٩)

१०. सन्मार्ग (देखाउनु) अल्लाहकै जिम्मेवारी रहेको छ, तथा (सन्मार्गबाट) टेढा भएका अन्य मार्गहरू पनि रहेका छन् । तथा यदि उनले -बल प्रयोग गरी) आफ्नो इच्छा (लादेका) भए, उनले तिमीहरू सबैलाई सन्मार्ग देखाउने थिए ।

هُوَ الَّذِيْٓ اَنْزَلَ مِنَ السَّمَآءِ مَآءً لَّكُمْ مِّنْهُ شَرَابٌ وَّمِنْهُ شَجَرٌ فِيْهِ تُسِيْمُوْنَ (١٠)

११. ती उनी नै हुन जसले तिमीहरूका निम्ति बादलबाट पानी बर्साउछन्; त्यसैबाट तिमीहरू पिउने पानी प्राप्त गर्छौ, तथा त्यसैबाट यस्ता वृक्षहरू (उम्रन्छन्) जसमा तिमीहरू (आफ्ना चौपायाहरूलाई) चराउने गर्छौ ।

يُنْۢبِتُ لَكُمْ بِهِ الزَّرْعَ وَالزَّيْتُوْنَ وَالنَّخِيْلَ وَالْاَعْنَابَ وَمِنْ كُلِّ الثَّمَرٰتِ ؕ اِنَّ فِيْ ذٰلِكَ لَاٰيَةً لِّقَوْمٍ يَّتَفَكَّرُوْنَ (١١)

१२. त्यसैद्वारा उनले तिमीहरूका निम्ति (सम्पूर्ण प्रकारका) अन्नहरू, तथा जैतुन र खजूर र अङ्गूर तथा सम्पूर्ण प्रकारका फलहरू उत्पन्न गर्छन् । निश्चय नै, चिन्तन-मनन गर्ने व्यक्तिहरूका निम्ति यस कुरामा एउटा चिह्न रहेको छ ।

وَسَخَّرَ لَكُمُ الَّيْلَ وَالنَّهَارَ ۙ وَالشَّمْسَ وَالْقَمَرَ ۖ وَالنُّجُوْمُ مُسَخَّرٰتٌۢ بِاَمْرِهٖ ۚ اِنَّ فِيْ ذٰلِكَ لَاٰيٰتٍ لِّقَوْمٍ يَّعْقِلُوْنَ ﴿١٢﴾

१३. तथा उनले नै रात्रि र दिनलाई तथा सूर्य र चन्द्रमालाई तिमीहरूको सेवामा खटाएका छन्; तथा नक्षत्रहरू (पनि) उनकै आदेशद्वारा सेवामा खटिएका छन् । निश्चय नै, बुद्धि खियाउने व्यक्तिहरूका निम्ति यसमा अनेकौं चिह्नहरू विद्यमान छन् ।

وَمَا ذَرَاَ لَكُمْ فِي الْاَرْضِ مُخْتَلِفًا اَلْوَانُهٗ ۗ اِنَّ فِيْ ذٰلِكَ لَاٰيَةً لِّقَوْمٍ يَّذَّكَّرُوْنَ ﴿١٣﴾

१४. तथा जुन विभिन्न प्रकारका रंगी-विरंगी वस्तुहरू उनले तिमीहरूका निम्ति पृथ्वीमा उत्पन्न गरेका छन् तिनीहरूलाई (उनले नै तिमीहरूको सेवामा खटाएका छन्) । निःसन्देह, अर्ती लिने व्यक्तिहरूका निम्ति यसमा एउटा चिह्न रहेको छ ।

وَهُوَ الَّذِيْ سَخَّرَ الْبَحْرَ لِتَاْكُلُوْا مِنْهُ لَحْمًا طَرِيًّا وَّتَسْتَخْرِجُوْا مِنْهُ حِلْيَةً تَلْبَسُوْنَهَا ۚ وَتَرَى الْفُلْكَ مَوَاخِرَ فِيْهِ وَلِتَبْتَغُوْا مِنْ فَضْلِهٖ وَلَعَلَّكُمْ تَشْكُرُوْنَ ﴿١٤﴾

१५. तथा उनी नै हुन् जसले समुद्रलाई (तिमीहरूका) अधीनमा गरिदिएका छन् ताकि तिमीहरू त्यसबाट ताजा मासु खाऊ, तथा त्यहाँबाट आफ्ना पहिरनका निम्ति अलङ्कारहरू प्राप्त गर । तथा जहाजहरूलाई पानी चिर्दै त्यसबाट अघिबढेको तिमी देख्छौ, (ताकि त्यसद्वारा तिमीहरू यात्रा गर) तथा तिमीहरू उनको समृद्धि (अनुग्रह) प्राप्तिका लागि प्रयत्न गर र तिमीहरू कृतज्ञ बन ।

وَاَلْقٰى فِي الْاَرْضِ رَوَاسِيَ اَنْ تَمِيْدَ بِكُمْ وَاَنْهٰرًا وَّسُبُلًا لَّعَلَّكُمْ تَهْتَدُوْنَ ﴿١٥﴾

१६. तथा उनले पृथ्वीमा तिमीहरूको जीविकाका लागि दृढ पर्वतहरू स्थापित गरेका छन् ताकि तिमीहरूलाई सन्मार्ग प्राप्त होस्* ।

* टिप्पणीः कतिपय विद्वान्हरूले "अन् तमीदा बिकुम्" ( اَنْ تَمِيْدَ بِكُمْ ) शब्दको अनुवाद "कम्पन" गरेका छन् यदि यसलाई स्वीकार्ने हो भने अर्थ बन्नेछ, अल्लाहले मानिसहरूमाथि आफुले गरेको अनुग्रह तिनीहरूलाई स्मरण गराउदै के भनेर गन्ने गर्छन् भने, हामीले विस्तृतरूपमा विनाशकार्य गर्नका निम्ति पर्वतहरूलाई सृष्टि गरेका हौं । दुर्भाग्यवश; तमीदा ( تميد ) शब्द मूलधातु माद ( ماد ) बाट लिइएको हो र त्यसको अर्थ खाद्यान्नको व्यवस्था गर्नु हो भन्ने कुरालाई उपेक्षा गरिएको छ । पवित्र कुरानमा प्रयोग भएको "माइदा" ( مائدة ) शब्द त्यही मूलधातुबाट लिइएको हो ।

यस अर्थलाई दृष्टिगत गर्ने हो भने उक्त आयतको सम्पूर्ण अर्थ नै परिवर्तन हुनेछ ।

وَعَلٰمٰتٍ ۚ وَبِالنَّجْمِ هُمْ يَهْتَدُوْنَ ﴿١٦﴾

१७. तथा (अन्य) चिह्नहरू (पनि) छन् (जसद्वारा) तथा नक्षत्रहरूद्वारा तिनीहरू उचित दिशा पहिल्याउने गर्छन् ।

أَفَمَنْ يَّخْلُقُ كَمَنْ لَّا يَخْلُقُ ۚ أَفَلَا تَذَكَّرُوْنَ ﴿١٧﴾

१८. अतः जसले सृष्टि गर्छ के त्यो सृष्टि नगर्ने सरह हुनसक्छ त? त्यसो भए के तिमीहरू अर्ती लिदैनौ त?

وَإِنْ تَعُدُّوْا نِعْمَةَ اللّٰهِ لَا تُحْصُوْهَا ۚ إِنَّ اللّٰهَ لَغَفُوْرٌ رَّحِيْمٌ ﴿١٨﴾

१९. तथा अल्लाहका अनुग्रहहरूलाई यदि तिमीहरूले गणना गर्ने प्रयास गरेमा, तिमीहरूले कदापि तिनीहरूलाई गणना गरेर सक्नेछैनौ । अल्लाह निश्चय नै परम क्षमाशील, परम करुणाशील छन् ।

وَاللّٰهُ يَعْلَمُ مَا تُسِرُّوْنَ وَمَا تُعْلِنُوْنَ ﴿١٩﴾

२०. तथा जुनकुरा तिमीहरू लुकाउँछौ, र जुनकुरा प्रकट गर्छौ, अल्लाह जान्दछन् ।

وَالَّذِيْنَ يَدْعُوْنَ مِنْ دُوْنِ اللّٰهِ لَا يَخْلُقُوْنَ شَيْـًٔا وَّهُمْ يُخْلَقُوْنَ ﴿٢٠﴾

२१. तथा अल्लाहलाई छाडी जसलाई तिनीहरू पुकार्छन्, तिनीहरूले केही सृष्टि गर्दैनन्, अपितु तिनीहरू स्वयम् सृष्टि गरिएका हुन् ।

أَمْوَاتٌ غَيْرُ أَحْيَآءٍ ۚ وَمَا يَشْعُرُوْنَ ۙ أَيَّانَ يُبْعَثُوْنَ ﴿٢١﴾

२२. (तिनीहरू) मुर्दा हुन्, जीवित होइनन्, तथा कहिले तिनीहरूको पुनरुत्थान हुनेछ भन्ने कुरा तिनीहरूलाई थाहा छैन ।

---

अल्लाहले पर्वतहरूलाई सम्पूर्ण जीवित प्राणीहरूको खाद्यान्नको व्यवस्थापनका निम्ति अत्यावश्यकीय (साधन) स्वरूप सृष्टि गरेका छन् । पानीलाई सरोवर, समुद्र तथा महासागरबाट अटुटरूपमा वाष्पद्वारा उठाइन्छ र त्यस तरल पदार्थलाई अधिक घनत्वपूर्ण कणहरूमा परिवर्तन गर्न उच्चस्थानतर्फ बहन गरिन्छ ।

पर्वतहरूको अस्तित्त्व वाष्पलाई पुनः पानीमा परिवर्तन गर्नका निम्ति अत्यावश्यकीय रहेको छ; त्यसैप्रकार विस्तृत रूपमा वर्षाको सिर्जना हुन्छ र त्यसलाई खाद्यान्नको अटुट र विस्तृत श्रृङ्खला उत्पन्न गर्नका निम्ति पृथ्वीतर्फ फर्काइन्छ ।

एक मात्र यही यस्तो अनुवाद हो जुन मूल विषयवस्तुसित मेल खान्छ तथा यसैमा आयतको बाँकी अंशसित पूर्णरूपमा समरूपता पाइन्छ । पानी र खाद्यको स्पष्ट (अटुट) सम्बन्ध रहेको छ । सभ्यता (उन्नति) को इतिहासमा नदीहरूले नै पर्वतीय भूमिहरूलाई उपयोगी बनाउनमा मुख्य भूमिका निर्वाह गरेका थिए, तथा तिनै नदीहरूको बग्ने मार्गहरूका साथसाथ स्थलमार्गहरू खनेर बनाइन्थे ।

إِلَٰهُكُمْ إِلَٰهٌ وَاحِدٌ ۚ فَالَّذِينَ لَا يُؤْمِنُونَ بِالْآخِرَةِ قُلُوبُهُم مُّنكِرَةٌ وَهُم مُّسْتَكْبِرُونَ ﴿٢٢﴾

२३. तिमीहरूका उपास्य केवल एकमात्र उपास्य रहेका छन् । तथा जसले परलोकप्रति विश्वास गर्दैनन्, तिनीहरूको हृदय भने (सत्यसित) अपरिचित छ, तथा तिनीहरू अहङ्कारले परिपूर्ण छन् ।

لَا جَرَمَ أَنَّ اللَّهَ يَعْلَمُ مَا يُسِرُّونَ وَمَا يُعْلِنُونَ ۚ إِنَّهُ لَا يُحِبُّ الْمُسْتَكْبِرِينَ ﴿٢٣﴾

२४. निस्सन्देह, जुनकुरा तिनीहरूले लुकाउने गर्छन् र जुनकुरा प्रकट गर्ने गर्छन् अल्लाहले (ती सबै कुराहरूलाई) जान्दछन् । निश्चय नै उनी अहङ्कार गर्ने व्यक्तिहरूलाई मन पराउँदैनन् ।

وَإِذَا قِيلَ لَهُم مَّاذَا أَنزَلَ رَبُّكُمْ ۙ قَالُوا أَسَاطِيرُ الْأَوَّلِينَ ﴿٢٤﴾

२५. तथा "जुनकुरा तिमीहरूका प्रतिपालकले अवतीर्ण गरेका छन् त्यसबारे (तिमीहरूको के विचार छ" भनी) जब तिनीहरूलाई भनिन्छ, तिनीहरू भन्छन्, "अतीतका मानिसहरूका कथाहरू हुन्," ।

لِيَحْمِلُوا أَوْزَارَهُمْ كَامِلَةً يَوْمَ الْقِيَامَةِ ۙ وَمِنْ أَوْزَارِ الَّذِينَ يُضِلُّونَهُم بِغَيْرِ عِلْمٍ ۗ أَلَا سَاءَ مَا يَزِرُونَ ﴿٢٥﴾

२६. ताकि पुनरुत्थानका दिन तिनीहरूले आफ्ना भारीहरू पूरा पूरा उठाउन्, तथा जसलाई तिनीहरू ज्ञानबिना नै पथभ्रष्ट गरिहेछन् तिनीहरूका भारीको एउटा अंश (समेत) । सावधान! जुन भारी तिनीहरू उठाइरहेछन् त्यो अति निकृष्ट रहेको छ ।

قَدْ مَكَرَ الَّذِينَ مِن قَبْلِهِمْ فَأَتَى اللَّهُ بُنْيَانَهُم مِّنَ الْقَوَاعِدِ فَخَرَّ عَلَيْهِمُ السَّقْفُ مِن فَوْقِهِمْ وَأَتَاهُمُ الْعَذَابُ مِنْ حَيْثُ لَا يَشْعُرُونَ ﴿٢٦﴾

२७. तिनीहरूभन्दा अघिका मानिसहरूले पनि योजना बनाएका थिए, परन्तु अल्लाहले तिनीहरूका गृह संरचनाको जग नै उखेलेर फ्याँके, फलस्वरूप माथिबाट छानो भत्केर तिनीहरूमाथि नै खस्नपुग्यो; तथा तिनीहरूमाथि त्यस दिशाबाट सजायँ आयो जसबारे तिनीहरूलाई केही थाहा थिएन ।

ثُمَّ يَوْمَ الْقِيَامَةِ يُخْزِيهِمْ وَيَقُولُ أَيْنَ شُرَكَائِيَ الَّذِينَ كُنتُمْ تُشَاقُّونَ فِيهِمْ ۚ قَالَ الَّذِينَ أُوتُوا الْعِلْمَ إِنَّ الْخِزْيَ الْيَوْمَ وَالسُّوءَ عَلَى الْكَافِرِينَ ﴿٢٧﴾

२८. तथा पुनरुत्थानका दिन उनले तिनीहरूलाई अपमानित गर्नेछन् र भन्नेछन्, "मेरा भागीदारहरू कहाँ छन् जसका कारण तिमीहरू (नबीहरूको) विरोध गर्ने गर्थ्यौ?" ज्ञानप्राप्त व्यक्तिहरूले भन्नेछन्, "अविश्वासी व्यक्तिहरूमाथि आज अवश्य

अपमान र सङ्कट (बर्सने) छ ।"

الَّذِيْنَ تَتَوَفّٰىهُمُ الْمَلٰٓئِكَةُ ظَالِمِيْٓ اَنْفُسِهِمْ ۪ فَاَلْقَوُا السَّلَمَ مَا كُنَّا نَعْمَلُ مِنْ سُوْٓءٍ ؕ بَلٰٓى اِنَّ اللّٰهَ عَلِيْمٌۢ بِمَا كُنْتُمْ تَعْمَلُوْنَ ﴿٢٩﴾

२९. जुन व्यक्तिहरूलाई तिनीहरूले आफ्ना आत्मामाथि अत्याचार गरिरहेका अवस्थामा फरिस्ताहरूले मृत्यु प्रदान गर्छन्, तिनीहरूले तब (के भन्दै) आत्मसमर्पण गर्नेछन् भने, "हामी त कुनै अपकर्म गर्ने गर्दैनथ्यौं ।" होइन, अपितु जुनकुरा तिमीहरू गर्ने गर्थ्यौ त्यसलाई अल्लाहले अवश्य राम्ररी जान्दछन्

فَادْخُلُوْٓا اَبْوَابَ جَهَنَّمَ خٰلِدِيْنَ فِيْهَا ؕ فَلَبِئْسَ مَثْوَى الْمُتَكَبِّرِيْنَ ﴿٣٠﴾

३०. अतः नर्कका ढोकाहरूबाट त्यहाँ निवास गर्नका निम्ति प्रवेश गर । निस्सन्देह, अहङ्कारी व्यक्तिहरूको वासस्थान निकृष्ट रहेको छ ।

وَقِيْلَ لِلَّذِيْنَ اتَّقَوْا مَاذَآ اَنْزَلَ رَبُّكُمْ ؕ قَالُوْا خَيْرًا ؕ لِلَّذِيْنَ اَحْسَنُوْا فِيْ هٰذِهِ الدُّنْيَا حَسَنَةٌ ؕ وَلَدَارُ الْاٰخِرَةِ خَيْرٌ ؕ وَلَنِعْمَ دَارُ الْمُتَّقِيْنَ ﴿٣١﴾

३१. तथा (जब) सत्यनिष्ठ व्यक्तिहरूलाई "तिमीहरूका प्रतिपालकले जुनकुरा अवतीर्ण गरेका छन् त्यसबारे -तिमीहरूको के विचार छ" भनी) भनिन्छ, तिनीहरू भन्छन्, "सर्वोत्तम ।" जुन व्यक्तिहरू पुण्यकर्म गर्छन् तिनीहरूका निम्ति यस संसारमा मङ्गल रहेको छ । तथा परलोकको निवास ता झन उत्तम हुनेछ । सत्यनिष्ठ व्यक्तिहरूको निवास निस्सन्देह अत्युत्तम रहेको छ ।

جَنّٰتُ عَدْنٍ يَّدْخُلُوْنَهَا تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ لَهُمْ فِيْهَا مَا يَشَآءُوْنَ ؕ كَذٰلِكَ يَجْزِى اللّٰهُ الْمُتَّقِيْنَ ﴿٣٢﴾

३२. अनन्त बगैचाहरू, जहाँ तिनीहरू प्रवेश गर्नेछन्; तिनीहरूअन्तर्गत नहरहरू बग्नेछन् । त्यहाँ तिनीहरूलाई जुन कुराको इच्छा लाग्छ (त्यो कुरा) प्राप्त हुनेछ । सत्यनिष्ठ व्यक्तिहरूलाई अल्लाहले यसै प्रकार प्रतिदान प्रदान गर्ने गर्छन् ।

الَّذِيْنَ تَتَوَفّٰىهُمُ الْمَلٰٓئِكَةُ طَيِّبِيْنَ ۙ يَقُوْلُوْنَ سَلٰمٌ عَلَيْكُمُ ۙ ادْخُلُوا الْجَنَّةَ بِمَا كُنْتُمْ تَعْمَلُوْنَ ﴿٣٣﴾

३३. जुन व्यक्तिहरूलाई तिनीहरू पवित्र रहेका अवस्थामा फरिस्ताहरूले मृत्युप्रदान गर्छन्, तिनीहरूले भन्छन् : "तिमीहरूमाथि शान्ति रहोस् ! तिमीहरू जे गर्ने गर्थ्यौ त्यसकैकारण तिमीहरू स्वर्गमा प्रवेश गर ।"

هَلْ يَنْظُرُوْنَ اِلَّآ اَنْ تَاْتِيَهُمُ الْمَلٰٓئِكَةُ اَوْ يَاْتِيَ اَمْرُ رَبِّكَ ۚ كَذٰلِكَ فَعَلَ الَّذِيْنَ مِنْ قَبْلِهِمْ ۚ وَمَا ظَلَمَهُمُ اللّٰهُ وَلٰكِنْ كَانُوْٓا اَنْفُسَهُمْ يَظْلِمُوْنَ ﴿٣٣﴾

३४. तिनीहरूप्रति फरिस्ताहरू आऊन्, अथवा तिम्रा प्रतिपालकको निर्णयको आगमन होस् भन्ने कुराबाहेक तिनीहरू अन्य कुन कुराको प्रतीक्षा गरिरहेछन्? तिनीहरूभन्दा पहिलेका व्यक्तिहरूले पनि त्यसै गरेका थिए । अल्लाहले तिनीहरूमाथि अत्याचार गरेका थिएनन्, अपितु तिनीहरू स्वयम् आफुमाथि अत्याचार गर्ने गर्थे ।

فَاَصَابَهُمْ سَيِّاٰتُ مَا عَمِلُوْا وَحَاقَ بِهِمْ مَّا كَانُوْا بِهٖ يَسْتَهْزِءُوْنَ ﴿٣٤﴾

३५. अतः तिनीहरूले गरेका अपकर्म(को परिणाम) तिनीहरूमाथि बर्स्यो, तथा जुनकुराको तिनीहरू ठट्टा उडाउने गर्थे त्यसैले तिनीहरूलाई घेर्‍यो ।

وَقَالَ الَّذِيْنَ اَشْرَكُوْا لَوْ شَآءَ اللّٰهُ مَا عَبَدْنَا مِنْ دُوْنِهٖ مِنْ شَيْءٍ نَّحْنُ وَلَآ اٰبَآؤُنَا وَلَا حَرَّمْنَا مِنْ دُوْنِهٖ مِنْ شَيْءٍ ۚ كَذٰلِكَ فَعَلَ الَّذِيْنَ مِنْ قَبْلِهِمْ ۚ فَهَلْ عَلَى الرُّسُلِ اِلَّا الْبَلٰغُ الْمُبِيْنُ ﴿٣٥﴾

३६. जसले (अल्लाहका) सहभागी तुल्याउने गर्छन् तिनीहरू भन्छन्; “यदि अल्लाहले चाहेका भए, हामी उनीबाहेक अन्य कसैको उपासना गर्ने नै थिएनौं, न हामी न त हाम्रा पितृहरू नै । न त उनको (आदेश)बिना हामी कुनै वस्तुलाई अवैध ठहऱ्याउने थियौं ।” तिनीहरूभन्दा पहिलेका मानिसहरूले पनि त्यसै गरेका थिए । परन्तु स्पष्ट रूपमा, सन्देश वहन गर्नुबाहेक सन्देशवाहकहरू अन्य कुनै कुराको जिम्मेवार छन् त?

وَلَقَدْ بَعَثْنَا فِيْ كُلِّ اُمَّةٍ رَّسُوْلًا اَنِ اعْبُدُوا اللّٰهَ وَاجْتَنِبُوا الطَّاغُوْتَ ۚ فَمِنْهُمْ مَّنْ هَدَى اللّٰهُ وَمِنْهُمْ مَّنْ حَقَّتْ عَلَيْهِ الضَّلٰلَةُ ۚ فَسِيْرُوْا فِي الْاَرْضِ فَانْظُرُوْا كَيْفَ كَانَ عَاقِبَةُ الْمُكَذِّبِيْنَ ﴿٣٦﴾

३७. तथा प्रत्येक जातिमा हामीले (के उपदेश दिँदै) सन्देशवाहक खड़ा गऱ्यौं (भने); “अल्लाहको उपासना गर र दुष्टहरूबाट टाढा रहने गर ।” त्यसपछि तिनीहरूमध्ये केही व्यक्तिहरू यस्ता थिए जसलाई अल्लाहले मार्ग देखाए तथा तिनीहरूमध्ये केही भने विनष्ट हुन योग्य भए । अतः पृथ्वीमा भ्रमण गरेर हेर, ती व्यक्तिहरूको अन्त कस्तो भएको थियो जसले (नबीहरूसित) मिथ्यावादी व्यक्तिहरू सरह व्यवहार गरेका थिए ।

اِنْ تَحْرِصْ عَلٰى هُدٰىهُمْ فَاِنَّ اللّٰهَ لَا يَهْدِيْ مَنْ يُّضِلُّ وَ مَا لَهُمْ مِّنْ نّٰصِرِيْنَ ﴿٣٧﴾

३८. यदि तिमी तिनीहरूको मार्गदर्शनका अभिलाषी छौ भने, जसले (अन्य व्यक्तिहरूलाई) पथभ्रष्ट गर्छन् ती व्यक्तिहरूलाई अल्लाहले कदापि सन्मार्ग देखाउँदैनन् र त्यस्ता व्यक्तिहरूका कुनै सहयोगी पनि हुँदैनन् (भनी जान) ।

وَ اَقْسَمُوْا بِاللّٰهِ جَهْدَ اَيْمَانِهِمْ لَا يَبْعَثُ اللّٰهُ مَنْ يَّمُوْتُ بَلٰى وَعْدًا عَلَيْهِ حَقًّا وَّ لٰكِنَّ اَكْثَرَ النَّاسِ لَا يَعْلَمُوْنَ ﴿٣٨﴾

३९. तथा जुन व्यक्तिहरू मर्छन् तिनीहरूलाई अल्लाहले जीवित गर्नेछैनन् भनी तिनीहरू दृढतापूर्वक अल्लाहको शपथ खान्छन् । त्यसो होइन, (उनले निश्चयपूर्वक तिनीहरूलाई जीवित गर्नेछन्) यो एउटा (यस्तो) वचन हो जसलाई पूर्ण गर्ने जिम्मेवारी (उनले) स्वयम्माथि लिएका छन् । परन्तु अधिकतर मानिसहरूले जान्दैनन् ।

لِيُبَيِّنَ لَهُمُ الَّذِيْ يَخْتَلِفُوْنَ فِيْهِ وَلِيَعْلَمَ الَّذِيْنَ كَفَرُوْا اَنَّهُمْ كَانُوْا كٰذِبِيْنَ ﴿٣٩﴾

४०. (उनले तिनीहरूलाई जीवित गर्नेछन्) ताकि जुन कुराहरूमा तिनीहरू मतभेद राख्थे तिनीहरू समक्ष त्यसलाई स्पष्ट गरून्, तथा अविश्वासी व्यक्तिहरूले तिनीहरू मिथ्यावादी थिए भनी जानून् ।

اِنَّمَا قَوْلُنَا لِشَيْءٍ اِذَاۤ اَرَدْنٰهُ اَنْ نَّقُوْلَ لَهٗ كُنْ فَيَكُوْنُ ﴿٤٠﴾

४१. कुनै वस्तुका सम्बन्धमा हाम्रो शब्द, (अर्थात्) जब हामी त्यसको चाहना गर्छौं, (तब) हामी त्यसलाई केवल, "भएस् ! " भनी भन्छौं र त्यो हुन पुग्छ ।

وَ الَّذِيْنَ هَاجَرُوْا فِي اللّٰهِ مِنْۢ بَعْدِ مَا ظُلِمُوْا لَنُبَوِّئَنَّهُمْ فِي الدُّنْيَا حَسَنَةً وَ لَاَجْرُ الْاٰخِرَةِ اَكْبَرُ لَوْ كَانُوْا يَعْلَمُوْنَ ﴿٤١﴾

४२. तथा ती व्यक्तिहरूका सम्बन्धमा जसले उत्पीडन सहन गरेपश्चात् अल्लाहका कारण आफ्ना घरहरू त्याग गरे, तिनीहरूलाई अवश्य यस संसारमा हामी उत्तम निवासस्थान प्रदान गर्नेछौं; तथा वस्तुतः परलोकको प्रतिदान अझ उत्तम रहेको छ, तर यदि तिनीहरूले जानेका भए–

الَّذِيْنَ صَبَرُوْا وَ عَلٰى رَبِّهِمْ يَتَوَكَّلُوْنَ ﴿٤٢﴾

४३. ती व्यक्तिहरू जसले धैर्यधारण गर्छन् तथा आफ्ना प्रतिपालक माथि नै आफ्नो

भरोसा राख्ने गर्छन् ।

४४. तथा तिमीभन्दा पहिला (पनि) केवल पुरुषहरूलाई हामीले सन्देशवाहक स्वरूप पठायौं, जसमाथि हामी आकाशवाणी गर्थ्यौं, अतः यदि तिमीहरू जान्दैनौ भने ॠल्लाहीय धर्मलिपिहरूको जिम्मेवारी उठाउने व्यक्तिहरूसित सोध ।

وَمَآ اَرْسَلْنَا مِنْ قَبْلِكَ اِلَّا رِجَالًا نُّوْحِيْٓ اِلَيْهِمْ فَسْـَٔلُوْٓا اَهْلَ الذِّكْرِ اِنْ كُنْتُمْ لَا تَعْلَمُوْنَ ﴿٤٣﴾

४५.(हामीले तिनीहरूलाई) स्पष्ट चिह्नहरू र धर्मलिपिहरूका साथ पठाएका थियौं । तथा तिमीमाथि हामीले यो स्मरणपत्र तिमीले मानव जातिलाई तिनीहरूका लागि अवतीर्ण गरिएका कुराहरू व्याख्याका साथ वर्णन गर्नेछौं र तिनीहरूले चिन्तन मनन् गर्नेछन् भनी अवतीर्ण गरेका हौं ।

بِالْبَيِّنٰتِ وَ الزُّبُرِ ؕ وَ اَنْزَلْنَآ اِلَيْكَ الذِّكْرَ لِتُبَيِّنَ لِلنَّاسِ مَا نُزِّلَ اِلَيْهِمْ وَ لَعَلَّهُمْ يَتَفَكَّرُوْنَ ﴿٤٤﴾

४६. त्यसो भए के ती व्यक्तिहरू जसले कुयोजना बनाउँछन् अल्लाहले तिनीहरूलाई धर्तीमा धसाउने छैनन् तथा तिनीहरूमाथि तिनीहरूलाई ज्ञान नभएको दिशाबाट सजायँ आउने छैन भनी ढुक्क परेका छन् त?

اَفَاَمِنَ الَّذِيْنَ مَكَرُوا السَّيِّاٰتِ اَنْ يَّخْسِفَ اللّٰهُ بِهِمُ الْاَرْضَ اَوْ يَاْتِيَهُمُ الْعَذَابُ مِنْ حَيْثُ لَا يَشْعُرُوْنَ ﴿٤٥﴾

४७.अथवा के तिनीहरू यताउति घुम्दैरहेका अवस्थामा तिनीहरूले (अल्लाहको योजनालाई) असफल नपारुन् भनेर उनले तिनीहरूलाई समात्नेछैनन् त?

اَوْ يَاْخُذَهُمْ فِيْ تَقَلُّبِهِمْ فَمَا هُمْ بِمُعْجِزِيْنَ ﴿٤٦﴾

४८. अथवा के तिनीहरूलाई उनले विस्तारै-विस्तारै नोक्सान पुऱ्याएर समाप्त गर्नेछैनन् (भनी ठान्छन्)? निश्चय नै, तिम्रा प्रतिपालक (अति) स्नेहशील, परम दयालु छन् ।

اَوْ يَاْخُذَهُمْ عَلٰى تَخَوُّفٍ ؕ فَاِنَّ رَبَّكُمْ لَرَءُوْفٌ رَّحِيْمٌ ﴿٤٧﴾

४९.अल्लाहले सृष्टि गरेका सम्पूर्ण वस्तुहरूका छायाँहरूले दायाँबाट र बायाँ (बाट) दिशा परिवर्तन गर्दै नम्रताका साथ अल्लाहका सामुन्ने स्वयम्लाई झुकाएको

اَوَلَمْ يَرَوْا اِلٰى مَا خَلَقَ اللّٰهُ مِنْ شَيْءٍ يَّتَفَيَّؤُا ظِلٰلُهٗ عَنِ الْيَمِيْنِ وَ الشَّمَآئِلِ سُجَّدًا لِّلّٰهِ وَهُمْ دٰخِرُوْنَ ﴿٤٨﴾

तिनीहरूले देखेका छैनन् र?

५०. आकाशमण्डलमा रहेका सम्पूर्ण वस्तुहरू र पृथ्वीमा रहेका सम्पूर्ण प्राणीहरू अल्लाह समक्ष (नम्रतापूर्वक) नतमस्तक रहन्छन् र फरिस्ताहरू (पनि) । तथा तिनीहरू अहङ्कारपूर्ण व्यवहार गर्दैनन् ।

وَلِلّٰهِ يَسْجُدُ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْاَرْضِ مِنْ دَآبَّةٍ وَّالْمَلٰٓئِكَةُ وَهُمْ لَا يَسْتَكْبِرُوْنَ ﴿٥٠﴾

५१. तिनीहरू आफुमाथि रहेका प्रतिपालक सित डराउँछन् तथा तिनीहरूलाई जे आदेश दिइन्छ त्यही कार्य गर्छन् ।

يَخَافُوْنَ رَبَّهُمْ مِّنْ فَوْقِهِمْ وَيَفْعَلُوْنَ مَا يُؤْمَرُوْنَ ﴿٥١﴾

५२. अल्लाहले भनेका छन्, "दुईवटा उपास्यहरूको (उपासना) नगर । उपास्य ता केवल एउटै छन् । त्यस कारण केवल मसित डराऊ ।"

وَقَالَ اللّٰهُ لَا تَتَّخِذُوْٓا اِلٰهَيْنِ اثْنَيْنِ ۚ اِنَّمَا هُوَ اِلٰهٌ وَّاحِدٌ ۚ فَاِيَّايَ فَارْهَبُوْنِ ﴿٥٢﴾

५३. तथा आकाशमण्डल र पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरू उनकै हुन् तथा मार्ग (निर्धारण गर्ने अधिकार) सदा उनको नै रहेको छ । अतः के तिमीहरू अल्लाहबाहेक अन्य कसैसित डराउनेछौ त?

وَلَهٗ مَا فِي السَّمٰوٰتِ وَالْاَرْضِ وَلَهُ الدِّيْنُ وَاصِبًا ۚ اَفَغَيْرَ اللّٰهِ تَتَّقُوْنَ ﴿٥٣﴾

५४. तथा तिमीहरूलाई प्राप्त सम्पूर्ण वैभव अल्लाहका तर्फबाटै रहेको छ । तथा जब तिमीहरूमाथि सङ्कट आउँछ, उनकै अगाडि तिमीहरू (सहयोगका निम्ति) रुन्छौ ।

وَمَا بِكُمْ مِّنْ نِّعْمَةٍ فَمِنَ اللّٰهِ ثُمَّ اِذَا مَسَّكُمُ الضُّرُّ فَاِلَيْهِ تَجْـَٔرُوْنَ ﴿٥٤﴾

५५. त्यसपछि, जब उनले तिमीहरूबाट सङ्कट निवारण गर्छन्, हेर ! तिमीहरूमध्ये एउटा समूहले आफ्नो प्रतिपालकका भागीदारहरू तुल्याउन (प्रारम्भ गरिहाल्छ)-

ثُمَّ اِذَا كَشَفَ الضُّرَّ عَنْكُمْ اِذَا فَرِيْقٌ مِّنْكُمْ بِرَبِّهِمْ يُشْرِكُوْنَ ﴿٥٥﴾

५६. ताकि तिनीहरूमाथि हामीले गरेको अनुग्रहलाई तिनीहरुले अस्वीकार गर्न सकून् । ठिक छ, केही मात्रामा सुखभोग गर; परन्तु शीघ्र नै तिमीहरूले थाहा पाउनेछौ ।

لِيَكْفُرُوْا بِمَآ اٰتَيْنٰهُمْ ۚ فَتَمَتَّعُوْا ۫ فَسَوْفَ تَعْلَمُوْنَ ﴿٥٦﴾

وَيَجْعَلُوْنَ لِمَا لَا يَعْلَمُوْنَ نَصِيْبًا مِّمَّا رَزَقْنٰهُمْ ۗ تَاللّٰهِ لَتُسْـَٔلُنَّ عَمَّا كُنْتُمْ تَفْتَرُوْنَ ﴿٥٧﴾

५७. तथा हामीले तिनीहरूलाई प्रदान गरेका वस्तुहरूबाट तिनीहरू (ती मिथ्या उपास्य हरूका निम्ति) जसबारे तिनीहरूलाई केही थाहा छैन, एउटा अंश निर्धारित गर्छन् । अल्लाहको शपथ, तिमीहरूले गढेका ती सबै कुराहरूका कारण तिमीहरूलाई अवश्य सोधपुछ गरिनेछ ।

وَيَجْعَلُوْنَ لِلّٰهِ الْبَنٰتِ سُبْحٰنَهٗ ۙ وَلَهُمْ مَّا يَشْتَهُوْنَ ﴿٥٨﴾

५८. तथा तिनीहरू अल्लाहका पुत्री (छोरी)हरू (छन् भनी) बखान्छन्– उनी त पवित्र छन्!– जब तिनीहरू (स्वयम्)लाई भने ती वस्तुहरू प्राप्त छन् जसको तिनीहरू इच्छा गर्छन् ।

وَاِذَا بُشِّرَ اَحَدُهُمْ بِالْاُنْثٰى ظَلَّ وَجْهُهٗ مُسْوَدًّا وَّهُوَ كَظِيْمٌ ﴿٥٩﴾

५९. तथा जब तिनीहरूमध्ये कसैलाई छोरी (जन्मिए)को खबर दिइन्छ, उसको मुख कालो हुन्छ तब उ -आफ्नो आन्तरिक) दु:खलाई दबाउछ ।

يَتَوَارٰى مِنَ الْقَوْمِ مِنْ سُوْٓءِ مَا بُشِّرَ بِهٖ ۗ اَيُمْسِكُهٗ عَلٰى هُوْنٍ اَمْ يَدُسُّهٗ فِى التُّرَابِ ۗ اَلَا سَآءَ مَا يَحْكُمُوْنَ ﴿٦٠﴾

६०. उसलाई प्राप्त भएको त्यस अशुभ–समाचारका कारण मानिसहरूबाट उ लुक्दै (हिँड्छ): "अपमान सहेर पनि त्यसलाई जीवित राख्ने अथवा त्यसलाई माटामुनि पुर्ने?" -भन्ने चिन्ता लिन्छ) । वस्तुत: तिनीहरू जुन निर्णय गर्छन् त्यो अति निकृष्ट रहेकोछ ।

لِلَّذِيْنَ لَا يُؤْمِنُوْنَ بِالْاٰخِرَةِ مَثَلُ السَّوْءِ ۚ وَلِلّٰهِ الْمَثَلُ الْاَعْلٰى ۗ وَهُوَ الْعَزِيْزُ الْحَكِيْمُ ﴿٦١﴾

६१. ती व्यक्तिहरू जसले परलोकप्रति विश्वास गर्दैनन् तिनीहरूमा अति निकृष्ट उदाहरण लागू हुन्छ; त्यस विपरीत अल्लाहका निम्ति भने सर्वोत्कृष्ट (उदाहरण) रहेको छ तथा उनी सर्वशक्तिमान, तत्त्वज्ञ छन् ।

وَلَوْ يُؤَاخِذُ اللّٰهُ النَّاسَ بِظُلْمِهِمْ مَّا تَرَكَ عَلَيْهَا مِنْ دَآبَّةٍ وَّلٰكِنْ يُّؤَخِّرُهُمْ اِلٰٓى اَجَلٍ مُّسَمًّى ۚ فَاِذَا جَآءَ اَجَلُهُمْ لَا يَسْتَاْخِرُوْنَ سَاعَةً وَّلَا

६२. तथा यदि अल्लाहले मानिसहरूलाई तिनीहरूको अत्याचारका कारण दण्ड दिनलाई पक्रिन्थे भने उनले त्यहाँ (पृथ्वीमा) कुनै जीवित प्राणीलाई छाड्ने थिएनन्, परन्तु एउटा निर्धारित म्यादसम्म उनले

يَسْتَقْدِمُوْنَ ﴿٦٢﴾

तिनीहरूलाई अवसर दिन्छन्; तथा जब तिनीहरूको म्याद पूर्ण हुन्छ (तब) तिनीहरू न एक घडी पछि रहन सक्छन्, न त (त्यसबाट) अघि बढ्न नै ।

وَيَجْعَلُوْنَ لِلّٰهِ مَا يَكْرَهُوْنَ وَتَصِفُ اَلْسِنَتُهُمُ الْكَذِبَ اَنَّ لَهُمُ الْحُسْنٰى ؕ لَا جَرَمَ اَنَّ لَهُمُ النَّارَ وَاَنَّهُمْ مُّفْرَطُوْنَ ﴿٦٢﴾

६३. तथा अल्लाहका निम्ति तिनीहरू त्यो कुरा तजबिज गर्छन् जुन कुरा तिनीहरू (स्वयम्का निम्ति) रुचाउँदैनन् तथा तिनीहरूलाई नै (सबै प्रकारको) भलाई (मङ्गल) प्राप्त हुनेछ भनी तिनीहरूको जिब्रोले मिथ्योचारण गर्ने गर्छ । निस्सन्देह, तिनीहरूलाई अग्नि मिल्नेछ, तथा त्यहीं तिनीहरूलाई छाडिनेछ ।

تَاللّٰهِ لَقَدْ اَرْسَلْنَآ اِلٰٓى اُمَمٍ مِّنْ قَبْلِكَ فَزَيَّنَ لَهُمُ الشَّيْطٰنُ اَعْمَالَهُمْ فَهُوَ وَلِيُّهُمُ الْيَوْمَ وَلَهُمْ عَذَابٌ اَلِيْمٌ ﴿٦٣﴾

६४. अल्लाहको शपथ, हामीले तिमीभन्दा पहिलाका सबै जातिहरूतर्फ (सन्देशवाहकहरू) पठाएका थियौं; परन्तु शैतानले तिनीहरूका कार्यहरूलाई तिनीहरूका दृष्टिमा सुन्दर (तुल्याएर) देखायो । त्यसकारण, आज त्यही तिनीहरूको आश्रयदाता हुनेछ, तथा तिनीहरूलाई पीडादायक दण्ड मिल्नेछ ।

وَمَآ اَنْزَلْنَا عَلَيْكَ الْكِتٰبَ اِلَّا لِتُبَيِّنَ لَهُمُ الَّذِى اخْتَلَفُوْا فِيْهِ ۙ وَهُدًى وَّرَحْمَةً لِّقَوْمٍ يُّؤْمِنُوْنَ ﴿٦٤﴾

६५. तथा जुन कुरामा तिनीहरूले मतभेद सिर्जना गरेका छन्, त्यस कुरालाई स्पष्टरूपमा तिनीहरूसमक्ष वर्णन गर्नेछौं भनी नै हामीले यो पुस्तक तिमीप्रति अवतीर्ण गरेका हौं, तथा विश्वासीजनका निम्ति (यो पुस्तक) मार्गदर्शनस्वरूप र अनुग्रहस्वरूप रहेको छ ।

وَاللّٰهُ اَنْزَلَ مِنَ السَّمَآءِ مَآءً فَاَحْيَا بِهِ الْاَرْضَ بَعْدَ مَوْتِهَا ؕ اِنَّ فِىْ ذٰلِكَ لَاٰيَةً لِّقَوْمٍ يَّسْمَعُوْنَ ﴿٦٥﴾

६६. तथा अल्लाहले आकाशबाट पानी बर्साए, र पृथ्वीलाई त्यसको मृत्युपश्चात् त्यसद्वारा पुनर्जीवित गरेका छन् । यस कुरामा सुन्ने व्यक्तिहरूका निम्ति एउटा चिह्न रहेको छ ।

وَاِنَّ لَكُمْ فِى الْاَنْعَامِ لَعِبْرَةً ؕ

६७. तथा चौपायाहरूमा -पनि) तिमीहरूका निम्ति एउटा शिक्षा रहेको छ । हामी

نُسْقِيْكُمْ مِّمَّا فِيْ بُطُوْنِهٖ مِنْۢ بَيْنِ فَرْثٍ وَّ دَمٍ لَّبَنًا خَالِصًا سَآئِغًا لِّلشّٰرِبِيْنَ ﴿٦٦﴾

तिमीहरूलाई तिनीहरूका पेटमा रहेका वस्तुहरूमध्ये गोबर र रक्तका बीचबाट पिउनका निम्ति शुद्ध दूध प्रदान गर्छौं; (तथा त्यो) पिउनेहरूका निम्ति तृप्तिदायक हुन्छ

وَ مِنْ ثَمَرٰتِ النَّخِيْلِ وَ الْاَعْنَابِ تَتَّخِذُوْنَ مِنْهُ سَكَرًا وَّ رِزْقًا حَسَنًا ؕ اِنَّ فِيْ ذٰلِكَ لَاٰيَةً لِّقَوْمٍ يَّعْقِلُوْنَ ﴿٦٧﴾

६८. तथा खजूरको फल र अङ्गुरबाट तिमीहरू मदिरा र विभिन्न उत्कृष्ट खाद्यहरू प्राप्त गर्छौ । वस्तुतः जसले आफ्नो बुद्धि खटाउने गर्छन् तिनका निम्ति यसमा चिह्न रहेको छ ।

وَاَوْحٰى رَبُّكَ اِلَى النَّحْلِ اَنِ اتَّخِذِيْ مِنَ الْجِبَالِ بُيُوْتًا وَّ مِنَ الشَّجَرِ وَمِمَّا يَعْرِشُوْنَ ﴿٦٨﴾

६९. तथा तिम्रा प्रतिपालकले (के भन्दै) माहुरीलाई आकाशवाणी गरे (भने), "पहाडमा र वृक्षहरूमा तथा तिनीहरूले बनाएका थाङ्ग्राहरूमा आफ्ना घर बनाउ ।"

ثُمَّ كُلِيْ مِنْ كُلِّ الثَّمَرٰتِ فَاسْلُكِيْ سُبُلَ رَبِّكِ ذُلُلًا ؕ يَخْرُجُ مِنْۢ بُطُوْنِهَا شَرَابٌ مُّخْتَلِفٌ اَلْوَانُهٗ فِيْهِ شِفَآءٌ لِّلنَّاسِ ؕ اِنَّ فِيْ ذٰلِكَ لَاٰيَةً لِّقَوْمٍ يَّتَفَكَّرُوْنَ ﴿٦٩﴾

७०. "त्यसपछि हरेक (प्रकारका) फल खाऊ , र त्यसपछि आज्ञाकारिताका साथ आफ्ना प्रतिपालकले निर्धारण गरेका मार्गहरूको अनुसरण गर ।" तिनीहरूका पेटबाट विभिन्न रङ्गको एउटा पिउने पदार्थ निस्कन्छ । त्यसभित्र मानिसहरूका निम्ति उपचार छ । निश्चय नै, चिन्तन-मनन गर्ने व्यक्तिहरूका निम्ति यसमा एउटा चिह्न छ

وَ اللّٰهُ خَلَقَكُمْ ثُمَّ يَتَوَفّٰىكُمْ ؕۙ وَ مِنْكُمْ مَّنْ يُّرَدُّ اِلٰۤى اَرْذَلِ الْعُمُرِ لِكَيْ لَا يَعْلَمَ بَعْدَ عِلْمٍ شَيْـًٔا ؕ اِنَّ اللّٰهَ عَلِيْمٌ قَدِيْرٌ ﴿٧٠﴾

७१. तथा अल्लाहले तिमीहरूलाई सृष्टि गरेका हुन्, त्यसपछि उनले नै तिमीहरूलाई मृत्यु प्रदान गर्छन्" तथा तिमीहरूमध्ये (केही व्यक्तिहरू) यस्ता छन् जो वृद्धावस्थामा पुग्छन् (त्यसको फलस्वरूप) सम्पूर्ण ज्ञान तिनीहरूले आर्जन गरेपश्चात् त्यसलाई गुमाउन पुग्छन् । निश्चय नै, अल्लाह सर्वज्ञ, परम पराक्रमी रहेका छन् ।

وَاللّٰهُ فَضَّلَ بَعْضَكُمْ عَلٰى بَعْضٍ فِي الرِّزْقِ ۚ فَمَا الَّذِيْنَ فُضِّلُوْا بِرَآدِّيْ

७२. तथा अल्लाहले तिमीहरूमध्ये केही व्यक्तिहंरूलाई अन्य केही व्यक्तिहरूको तुलनामा (सांसारिक) जीवनवृत्तिमा श्रेष्ठता प्रदान गरेका छन् । परन्तु जसलाई श्रेष्ठता

رِزْقِهِمْ عَلَىٰ مَا مَلَكَتْ أَيْمَانُهُمْ فَهُمْ فِيهِ سَوَاءٌ ۚ أَفَبِنِعْمَةِ اللَّهِ يَجْحَدُونَ ﴿٧١﴾

प्राप्त छ तिनीहरूले आफ्नो (सांसारिक) जीवनवृत्तिको (कुनै अंश) तिनीहरूका दाहिने हातअन्तर्गत (नौकर) रहेका व्यक्तिहरूतर्फ प्रत्यावर्तन गर्दैनन्, जसका कारण उनीहरू तिनीहरूका बराबरका (अंशियार) बनून् । त्यसोभए के तिनीहरूले अल्लाहको अनुग्रहलाई अस्वीकार गर्नेछन् त?

وَاللَّهُ جَعَلَ لَكُم مِّنْ أَنفُسِكُمْ أَزْوَاجًا وَجَعَلَ لَكُم مِّنْ أَزْوَاجِكُم بَنِينَ وَحَفَدَةً وَرَزَقَكُم مِّنَ الطَّيِّبَاتِ ۚ أَفَبِالْبَاطِلِ يُؤْمِنُونَ وَبِنِعْمَتِ اللَّهِ هُمْ يَكْفُرُونَ ﴿٧٢﴾

७३. तथा अल्लाहले तिमीहरूका निम्ति तिमीहरूमध्येबाटै जोडीहरूको सिर्जना गरेका छन्, तथा तिमीहरूका जोडीहरूबाट तिमीहरूका निम्ति पुत्रहरू र नातिहरू बनाएका छन् तथा पवित्र वस्तुहरूबाट तिमीहरूलाई जीवनवृत्ति प्रदान गरेका छन् । त्यसो भए के तिनीहरूले व्यर्थ कुराहरूमाथि चाहिँ विश्वास गर्नेछन् र अल्लाहको अनुग्रहलाई भने अस्वीकार गर्नेछन् त?

وَيَعْبُدُونَ مِن دُونِ اللَّهِ مَا لَا يَمْلِكُ لَهُمْ رِزْقًا مِّنَ السَّمَاوَاتِ وَالْأَرْضِ شَيْئًا وَلَا يَسْتَطِيعُونَ ﴿٧٣﴾

७४. तथा तिनीहरू अल्लाहलाई छाडी त्यस्ताको उपासना गर्छन् जसमा आकाशमण्डल अथवा पृथ्वीबाट तिनीहरूलाई कुनै प्रकारको जीविका दिने शक्ति छैन, न त तिनीहरूलाई (कहिल्यै) त्यस्तो सामर्थ्य प्राप्त हुनेछ ।

فَلَا تَضْرِبُوا لِلَّهِ الْأَمْثَالَ ۚ إِنَّ اللَّهَ يَعْلَمُ وَأَنتُمْ لَا تَعْلَمُونَ ﴿٧٤﴾

७५. अत: अल्लाहका निम्ति उपमाहरूको आविष्कार नगर । निस्सन्देह अल्लाह जान्दछन् तथा तिमीहरू जान्दैनौ ।

ضَرَبَ اللَّهُ مَثَلًا عَبْدًا مَّمْلُوكًا لَّا يَقْدِرُ عَلَىٰ شَيْءٍ وَمَن رَّزَقْنَاهُ مِنَّا رِزْقًا حَسَنًا فَهُوَ يُنفِقُ مِنْهُ سِرًّا وَجَهْرًا ۖ هَلْ يَسْتَوُونَ ۚ الْحَمْدُ لِلَّهِ ۚ بَلْ أَكْثَرُهُمْ لَا يَعْلَمُونَ ﴿٧٥﴾

७६. अल्लाह एउटा यस्तो अधीनस्थ दासको दृष्टान्त वर्णन गर्छन् जसमा केही गर्ने सामर्थ्य छैन; तथा -एकजना यस्तो स्वाधीन व्यक्तिको) जसलाई हामीले आफ्ना जुनाफबाट उत्तम जीवनवृत्ति प्रदान गरेका छौं, तथा त्यसबाट त्यो गुप्तरूपमा र प्रकाश्यरूपमा खर्च गर्छ । के तिनीहरू एकसमान हुन सक्छन् र? सम्पूर्ण प्रशंसाका स्वामी अल्लाह नै हुन् ! परन्तु तिनीहरूमध्ये

अधिकतर (व्यक्तिहरू) जान्दैनन् ।

وَضَرَبَ اللّٰهُ مَثَلًا رَّجُلَيْنِ اَحَدُهُمَآ اَبْكَمُ لَا يَقْدِرُ عَلٰى شَيْءٍ وَّهُوَ كَلٌّ عَلٰى مَوْلٰىهُ ۙ اَيْنَمَا يُوَجِّهْهُّ لَا يَاْتِ بِخَيْرٍ ۭ هَلْ يَسْتَوِيْ هُوَ ۙ وَمَنْ يَّاْمُرُ بِالْعَدْلِ ۙ وَهُوَ عَلٰى صِرَاطٍ مُّسْتَقِيْمٍ ﴿٧٦﴾

७७. तथा अल्लाह (अन्य) दुईजना व्यक्तिहरूको दृष्टान्त वर्णन गर्छन् : तिनीहरूमध्ये एउटा चाहिँ लाटो रहेको छ, जो कुनै वस्तुमाथि सामर्थ्य राख्दैन, तथा त्यो आफ्ना स्वामीका निम्ति एउटा बोझ रहेको छ; उसले त्यसलाई जता पठाए पनि त्यसले कहीँबाट कुनै भलाइ ल्याउँदैन । के त्यो व्यक्ति उस व्यक्तिसरह हुन सक्छ जसले न्यायको उपदेश दिन्छ र जो व्यक्ति स्वयम् सन्मार्गमाथि स्थिर रहेको छ?

وَلِلّٰهِ غَيْبُ السَّمٰوٰتِ وَالْاَرْضِ ۭ وَمَآ اَمْرُ السَّاعَةِ اِلَّا كَلَمْحِ الْبَصَرِ اَوْ هُوَ اَقْرَبُ ۭ اِنَّ اللّٰهَ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ﴿٧٧﴾

७८. तथा आकाशमण्डल र पृथ्वीका अदृश्य (कुराहरू) अल्लाहकै अधीनमा (छन्); तथा त्यस घडीको मामिला त आँखा झिम्कनु सदृश रहेको छ, अपितु त्योभन्दा पनि अझ निकट । निश्चय नै, सम्पूर्ण कुराहरूमाथि अल्लाह पूर्ण सामर्थ्यवान रहेका छन् ।

وَاللّٰهُ اَخْرَجَكُمْ مِّنْۢ بُطُوْنِ اُمَّهٰتِكُمْ لَا تَعْلَمُوْنَ شَيْـــًٔا ۙ وَّجَعَلَ لَكُمُ السَّمْعَ وَالْاَبْصَارَ وَالْاَفْـِٕدَةَ ۙ لَعَلَّكُمْ تَشْكُرُوْنَ ﴿٧٨﴾

७९. तथा अल्लाहले तिमीहरूलाई तिमीहरूका मातृहरूका कोखबाट तिमीहरू अज्ञान रहेका अवस्थामा नै निकाले । तथा उनले तिमीहरूलाई कान, आँखा र हृदय प्रदान गरे ताकि तिमीहरु कृतज्ञ बन ।

اَلَمْ يَرَوْا اِلَى الطَّيْرِ مُسَخَّرٰتٍ فِيْ جَوِّ السَّمَاۗءِ ۭ مَا يُمْسِكُهُنَّ اِلَّا اللّٰهُ ۭ اِنَّ فِيْ ذٰلِكَ لَاٰيٰتٍ لِّقَوْمٍ يُّؤْمِنُوْنَ ﴿٧٩﴾

८०. के तिनीहरूले पक्षीहरूलाई वायुमण्डलमा (माथि) वशीभूत गरेर राखिएको अवलोकन गरेका छैनन् र? तिनीहरूलाई अल्लाहबाहेक अन्य कसैले (माथि) रोकेर राखेको छैन । वस्तुतः, विश्वासीजनका निम्ति यसमा चिह्नहरू रहेका छन् ।

وَاللّٰهُ جَعَلَ لَكُمْ مِّنْۢ بُيُوْتِكُمْ سَكَنًا وَّجَعَلَ لَكُمْ مِّنْ جُلُوْدِ الْاَنْعَامِ بُيُوْتًا

८१. तथा अल्लाहले तिमीहरूका घरहरूलाई तिमीहरूका निम्ति विश्रामस्थलस्वरूप बनाएका छन् तथा चौपायाको छालाद्वारा तिमीहरूका निम्ति यस्ता निवासहरू

تَسْتَخِفُّوْنَهَا يَوْمَ ظَعْنِكُمْ وَ يَوْمَ إِقَامَتِكُمْ ۙ وَمِنْ أَصْوَافِهَا وَأَوْبَارِهَا وَأَشْعَارِهَا أَثَاثًا وَّمَتَاعًا إِلٰى حِيْنٍ ﴿٨٠﴾

बनाएका छन्, जसलाई भ्रमणावस्थामा र विरामावस्थामा तिमीहरू हलुका अनुभव गर्छौ; तथा तिनीहरूको ऊन, र तिनीहरूको भुवा तथा तिनीहरूको केशबाट (उनले तिमीहरूलाई) घरेलु वस्तुहरू तथा केही समयका निम्ति उपभोग्य उपकरणहरू (उपलब्ध गराएका छन्) ।

وَاللّٰهُ جَعَلَ لَكُمْ مِّمَّا خَلَقَ ظِلٰلًا وَّجَعَلَ لَكُمْ مِّنَ الْجِبَالِ أَكْنَانًا وَّجَعَلَ لَكُمْ سَرَابِيْلَ تَقِيْكُمُ الْحَرَّ وَسَرَابِيْلَ تَقِيْكُمْ بَأْسَكُمْ ۚ كَذٰلِكَ يُتِمُّ نِعْمَتَهٗ عَلَيْكُمْ لَعَلَّكُمْ تُسْلِمُوْنَ ﴿٨١﴾

८२. तथा अल्लाहले तिमीहरूका निम्ति आफुले सृष्टि गरेका वस्तुहरूबाट छायाँ (दिने वस्तुहरू) बनाएका छन्; तथा पर्वतहरूमा उनले तिमीहरूका निम्ति आश्रय स्थलहरू बनाएका छन् । तथा उनले तिमीहरूका निम्ति यस्ता वस्त्रहरू बनाएका छन् जसले तिमीहरूलाई गर्मीबाट बचाउँछन्; तथा तिमीहरूलाई लडाइँमा बचाउने जङ्गी पोशाकहरू (बनाएका छन्) । यसै प्रकार उनी तिमीहरूमाथि आफ्नो अनुग्रह पूर्ण गर्छन्, ताकि तिमीहरू (उनका) आज्ञाकारी बन ।

فَإِنْ تَوَلَّوْا فَإِنَّمَا عَلَيْكَ الْبَلٰغُ الْمُبِيْنُ ﴿٨٢﴾

८३. परन्तु यदि तिनीहरू विमुख हुन्छन् भने, तिम्रो जिम्मेवारी त केवल सन्देश पुऱ्याउनु रहेको छ ।

يَعْرِفُوْنَ نِعْمَتَ اللّٰهِ ثُمَّ يُنْكِرُوْنَهَا وَأَكْثَرُهُمُ الْكٰفِرُوْنَ ﴿٨٣﴾

८४. तिनीहरू अल्लाहको अनुग्रहसित राम्ररी परिचित छन्, (जसरी तिनीहरूले त्यसलाई देखेका छन्) तथापि तिनीहरू त्यसलाई अस्वीकार गर्छन्; तथा तिनीहरूमध्ये अधिकतर व्यक्तिहरू भने अकृतज्ञ रहेका छन् ।

وَيَوْمَ نَبْعَثُ مِنْ كُلِّ أُمَّةٍ شَهِيْدًا ثُمَّ لَا يُؤْذَنُ لِلَّذِيْنَ كَفَرُوْا وَلَا هُمْ يُسْتَعْتَبُوْنَ ﴿٨٤﴾

८५. तथा त्यस दिनको (स्मरण गर) जब हामी प्रत्येक जातिबाट एक-एकजना साक्षी खडा गर्नेछौं तब अविस्वासी व्यक्तिहरूलाई न (उजुर गर्ने) अनुमति दिइनेछ, न त तिनीहरूको उजुरी स्वीकार गरिनेछ ।

وَإِذَا رَأَى الَّذِينَ ظَلَمُوا الْعَذَابَ فَلَا يُخَفَّفُ عَنْهُمْ وَلَا هُمْ يُنظَرُونَ ٨٥

८६. तथा जब अत्याचारीहरूले वास्तवमै दण्डलाई देख्ने छन्, तब न त्यो तिनीहरूका निम्ति हलुका गरिनेछ न त तिनीहरूलाई अवसर नै दिइनेछ ।

وَإِذَا رَأَى الَّذِينَ أَشْرَكُوا شُرَكَاءَهُمْ قَالُوا رَبَّنَا هَٰؤُلَاءِ شُرَكَاؤُنَا الَّذِينَ كُنَّا نَدْعُو مِن دُونِكَ ۖ فَأَلْقَوْا إِلَيْهِمُ الْقَوْلَ إِنَّكُمْ لَكَاذِبُونَ ٨٦

८७. तथा जब (अल्लाहका) भागीदार तुल्याउने व्यक्तिहरूले आफुले तुल्याएका भागीदारहरूलाई देख्ने छन् तब तिनीहरूले के भन्ने छन् भने, "हे हाम्रा प्रतिपालक, हामीले तुल्याएका उपास्यहरू यिनीहरू नै हुन्, जसलाई हामी तिम्रो सट्टामा पुकार्ने गर्थ्यौं ।" त्यसको प्रतिउत्तरमा तिनीहरूले के भन्दै हकार्नेछन् भने, "तिमीहरू निश्चय नै मिथ्यावादी रहेका छौ ।"

وَأَلْقَوْا إِلَى اللَّهِ يَوْمَئِذٍ السَّلَمَ ۖ وَضَلَّ عَنْهُم مَّا كَانُوا يَفْتَرُونَ ٨٧

८८. त्यसदिन तिनीहरूले अल्लाह समक्ष आज्ञाकारिता प्रकट गर्नेछन् तथा तिनीहरूले गढ्ने गरेका मिथ्या कुराहरू तिनीहरूबाट विलय हुनेछन् ।

الَّذِينَ كَفَرُوا وَصَدُّوا عَن سَبِيلِ اللَّهِ زِدْنَاهُمْ عَذَابًا فَوْقَ الْعَذَابِ بِمَا كَانُوا يُفْسِدُونَ ٨٨

८९. जुन व्यक्तिहरू अविश्वास गर्छन् तथा (मानिसहरूलाई) अल्लाहको मार्गबाट विमुख तुल्याउँछन्, तिनीहरूले गर्ने गरेका भ्रष्टाचारपूर्ण कार्यहरूका कारण तिनीहरूको) दण्डमाथि हामी अझ दण्ड थपिदिनेछौं ।

وَيَوْمَ نَبْعَثُ فِي كُلِّ أُمَّةٍ شَهِيدًا عَلَيْهِم مِّنْ أَنفُسِهِمْ ۖ وَجِئْنَا بِكَ شَهِيدًا عَلَىٰ هَٰؤُلَاءِ ۚ وَنَزَّلْنَا عَلَيْكَ الْكِتَابَ تِبْيَانًا لِّكُلِّ شَيْءٍ وَهُدًى وَرَحْمَةً وَبُشْرَىٰ لِلْمُسْلِمِينَ ٨٩

९०. तथा त्यसदिनको (स्मरण गर) जब हामी प्रत्येक जातिमा तिनीहरू विरुद्ध तिनीहरूमध्येबाटै एकजना साक्षी खडा गर्नेछौं, तथा ती सबै (जातिहरू)विरुद्ध तिमीलाई साक्षीस्वरूप प्रस्तुत गर्नेछौं । तथा तिमीप्रति हामीले यो पुस्तक सम्पूर्ण कुराहरू विस्तृत रूपमा वर्णन गर्नका निम्ति, तथा मार्गदर्शनस्वरूप, र अनुग्रहस्वरूप तथा (अल्लाहका) आज्ञाकारी व्यक्तिहरूका निम्ति शुभसन्देशस्वरूप अवतीर्ण गरेका छौं ।

إِنَّ ٱللَّهَ يَأْمُرُ بِٱلْعَدْلِ وَٱلْإِحْسَانِ وَإِيتَآئِ ذِى ٱلْقُرْبَىٰ وَيَنْهَىٰ عَنِ ٱلْفَحْشَآءِ وَٱلْمُنكَرِ وَٱلْبَغْىِ ۚ يَعِظُكُمْ لَعَلَّكُمْ تَذَكَّرُونَ ﴿٩١﴾

९१. निस्सन्देह, अल्लाह तिमीहरूलाई न्यायमा कायम रहने तथा कृपापूर्ण व्यवहार गर्ने, तथा निकटसम्बन्धीले (आफ्ना) निकटसम्बन्धीलाई दिएझैँ गरि दिने आदेश दिन्छन्"; तथा निर्लज्जताबाट र दुष्कार्यबाट तथा विद्रोहबाट रोक्छन् । तिमीहरूले ध्यान दिनेछौ भनी उनी तिमीहरूलाई उपदेश दिन्छन् ।

وَأَوْفُوا۟ بِعَهْدِ ٱللَّهِ إِذَا عَٰهَدتُّمْ وَلَا تَنقُضُوا۟ ٱلْأَيْمَٰنَ بَعْدَ تَوْكِيدِهَا وَقَدْ جَعَلْتُمُ ٱللَّهَ عَلَيْكُمْ كَفِيلًا ۚ إِنَّ ٱللَّهَ يَعْلَمُ مَا تَفْعَلُونَ ﴿٩٢﴾

९२. तथा जब तिमीहरू अङ्गीकार गर्छौ तब अल्लाहसित गरेको त्यस अङ्गीकारलाई पूर्ण गर; तथा अल्लाहलाई जमानत ठहऱ्याई दृढ तुल्याएको शपथलाई दृढ तुल्याएपश्चात् तोड्ने नगर । निःस्सन्देह, तिमीहरू जुन कार्य गर्छौ अल्लाहले त्यसलाई जान्दछन् ।

وَلَا تَكُونُوا۟ كَٱلَّتِى نَقَضَتْ غَزْلَهَا مِنۢ بَعْدِ قُوَّةٍ أَنكَٰثًا تَتَّخِذُونَ أَيْمَٰنَكُمْ دَخَلًۢا بَيْنَكُمْ أَن تَكُونَ أُمَّةٌ هِىَ أَرْبَىٰ مِنْ أُمَّةٍ ۚ إِنَّمَا يَبْلُوكُمُ ٱللَّهُ بِهِۦ ۚ وَلَيُبَيِّنَنَّ لَكُمْ يَوْمَ ٱلْقِيَٰمَةِ مَا كُنتُمْ فِيهِ تَخْتَلِفُونَ ﴿٩٣﴾

९३. तथा त्यस महिलासदृश नबन । जसले स्वयम् कातेको धागोलाई बलियो तुल्याएपश्चात् चुँडेर पुनः टुक्रा टुक्रा तुल्याउँछे। एउटा जाति अर्को जातिभन्दा शक्तिशाली बन्ला कि भन्ने (आशङ्काका) कारण तिमीहरू आफ्ना शपथलाई परस्पर धोकाबाजीको साधन बनाउँछौ । निस्सन्देह अल्लाहले त्यसद्वारा तिमीहरूको परीक्षा लिने गर्छन्, तथा पुनरुत्थानका दिन उनले कुन कुराका सम्बन्धमा तिमीहरू मतभेद राख्ने गर्थ्यौ भन्ने कुरा तिमीहरूसमक्ष स्पष्ट तुल्याउने छन् ।

وَلَوْ شَآءَ ٱللَّهُ لَجَعَلَكُمْ أُمَّةً وَٰحِدَةً وَلَٰكِن يُضِلُّ مَن يَشَآءُ وَيَهْدِى مَن يَشَآءُ ۚ وَلَتُسْـَٔلُنَّ عَمَّا كُنتُمْ تَعْمَلُونَ ﴿٩٤﴾

९४. तथा अल्लाहले यदि आफ्नो इच्छालाई (बल प्रयोग गरी) लादेका भए उनले निश्चय नै तिमीहरू (सबै)लाई एउटै सम्प्रदाय बनाउने थिए, परन्तु पथभ्रष्ट हुन चाहनेलाई उनी पथभ्रष्ट हुन दिन्छन्, तथा सन्मार्गमा लाग्न इच्छुक व्यक्तिलाई सन्मार्ग देखाउँछन् । तथा जुन कार्यहरू तिमीहरू गर्ने गर्छौ त्यसबारे अवश्य तिमीहरूलाई सोधिनेछ ।

وَلَا تَتَّخِذُوٓا اَيۡمَانَكُمۡ دَخَلًۢا بَيۡنَكُمۡ فَتَزِلَّ قَدَمٌۢ بَعۡدَ ثُبُوۡتِهَا وَتَذُوۡقُوا السُّوۡٓءَ بِمَا صَدَدۡتُّمۡ عَنۡ سَبِيۡلِ اللّٰهِ ۚ وَلَكُمۡ عَذَابٌ عَظِيۡمٌ ﴿٩٥﴾

९५. तथा आफ्ना शपथहरूलाई तिमीहरू परस्पर एक अर्कालाई धोका दिने साधन नबनाऊ, अन्यथा (तिमीहरूको) पाउ स्थिर भएपश्चात् पुन: चिप्लन पुग्नेछ । तथा (मानसिहरूलाई) अल्लाहका मार्गबाट विमुख तुल्याएका कारण तिमीहरू पापको स्वाद चाख्नेछौ, तथा तिमीहरूलाई कठोर दण्ड मिल्नेछ ।

وَلَا تَشۡتَرُوۡا بِعَهۡدِ اللّٰهِ ثَمَنًا قَلِيۡلًا ؕ اِنَّمَا عِنۡدَ اللّٰهِ هُوَ خَيۡرٌ لَّكُمۡ اِنۡ كُنۡتُمۡ تَعۡلَمُوۡنَ ﴿٩٦﴾

९६. तथा अल्लाहसितको संविदा (अङ्गीकार) लाई तुच्छ मुल्यका सट्टामा विनिमय नगर । निश्चय नै, यदि तिमीहरू जान्दछौ भने जुन वस्तु अल्लाहका जुनाफमा छ त्यो नै तिमीहरूका निम्ति उत्तम रहेको छ ।

مَا عِنۡدَكُمۡ يَنۡفَدُ وَمَا عِنۡدَ اللّٰهِ بَاقٍ ؕ وَلَنَجۡزِيَنَّ الَّذِيۡنَ صَبَرُوۡٓا اَجۡرَهُمۡ بِاَحۡسَنِ مَا كَانُوۡا يَعۡمَلُوۡنَ ﴿٩٧﴾

९७. जुन कुरा तिमीहरूसित छ त्यो त समाप्त हुनेछ, परन्तु जुनकुरा अल्लाहसित छ त्यो (सर्वदा) रहनेछ । तथा धैर्यधारी व्यक्तिहरूलाई तिनीहरूका उत्तम कार्यहरू अनुसार नै हामी तिनीहरूको प्रतिदान प्रदान गर्नेछौं ।

مَنۡ عَمِلَ صَالِحًا مِّنۡ ذَكَرٍ اَوۡ اُنۡثٰى وَهُوَ مُؤۡمِنٌ فَلَنُحۡيِيَنَّهٗ حَيٰوةً طَيِّبَةً ۚ وَلَنَجۡزِيَنَّهُمۡ اَجۡرَهُمۡ بِاَحۡسَنِ مَا كَانُوۡا يَعۡمَلُوۡنَ ﴿٩٨﴾

९८. पुरुप होस् अथवा महिला नै, विश्वासी रहेका अवस्थामा जसले सत्कर्म गर्छ, हामी अवश्य त्यसलाई पवित्र जीवन प्रदान गर्नेछौं, तथा तिनीहरका उत्तम कार्यहरू अनुसार नै हामी त्यस्ता व्यक्तिहरूलाई तिनीहरूको प्रतिदान प्रदान गर्नेछौं ।

فَاِذَا قَرَاۡتَ الۡقُرۡاٰنَ فَاسۡتَعِذۡ بِاللّٰهِ مِنَ الشَّيۡطٰنِ الرَّجِيۡمِ ﴿٩٩﴾

९९. तथा जब तिमी कुरानको पाठ प्रारम्भ गर्छौ, तब तिरस्कृत सैतानबाट अल्लाहको आश्रय याचना गर ।

اِنَّهٗ لَيۡسَ لَهٗ سُلۡطٰنٌ عَلَى الَّذِيۡنَ اٰمَنُوۡا وَعَلٰى رَبِّهِمۡ يَتَوَكَّلُوۡنَ ﴿١٠٠﴾

१००. ती व्यक्तिहरू, जसले विश्वास गर्छन् तथा जसले आफ्ना प्रतिपालकमाथि आफ्नो भरोसा राख्छन् तिनीहरूमाथि निश्चय नै त्यसको कुनै सामर्थ्य छैन ।

१०१. तिनीहरूमाथि मात्र उसको सामर्थ्य रहेको छ जुन व्यक्तिहरूले त्यो सित मित्रता गर्छन् तथा जसले उनका भागीदार तुल्याउँछन्,

إِنَّمَا سُلْطٰنُهٗ عَلَى الَّذِيْنَ يَتَوَلَّوْنَهٗ وَ الَّذِيْنَ هُمْ بِهٖ مُشْرِكُوْنَ ﴿١٠٠﴾

१०२. तथा जब कुनै चिह्नको स्थानमा हामी अर्को चिह्न प्रस्तुत गर्छौं– र अल्लाहले त्यस कुरालाई सर्वाधिक जान्दछन् जुन कुरा उनले अवतीर्ण गर्छन्– तिनीहरू भन्छन्, "तिमी त एकजना मिथ्या गढ्ने व्यक्ति मात्र हौ ।" होइन, परन्तु तिनीहरूमध्ये धेरैजसो व्यक्तिहरू ज्ञानरहित छन् ।

وَ اِذَا بَدَّلْنَآ اٰيَةً مَّكَانَ اٰيَةٍ ۙ وَّ اللّٰهُ اَعْلَمُ بِمَا يُنَزِّلُ قَالُوْٓا اِنَّمَآ اَنْتَ مُفْتَرٍ ؕ بَلْ اَكْثَرُهُمْ لَا يَعْلَمُوْنَ ﴿١٠١﴾

१०३. तिमी भन, " पवित्र आत्माले त्यसलाई तिम्रा प्रतिपालकका तर्फबाट सत्यमा आधारित अवतीर्ण गरेका हुन्, ताकि उनले विश्वासीहरूलाई दृढ तुल्याऊँन्, तथा त्यो आज्ञाकारीहरूका निम्ति एउटा मार्गदर्शन तथा शुभसन्देश रहेको छ ।

قُلْ نَزَّلَهٗ رُوْحُ الْقُدُسِ مِنْ رَّبِّكَ بِالْحَقِّ لِيُثَبِّتَ الَّذِيْنَ اٰمَنُوْا وَ هُدًى وَّ بُشْرٰى لِلْمُسْلِمِيْنَ ﴿١٠٢﴾

१०४. तथा जसले त्यसलाई सिकाउँछ त्यो ता एउटा मानिस नै हो भन्ने तिनीहरूको भनाइलाई हामी निश्चयपूर्वक जान्दछौं । (परन्तु उक्त सङ्केतका साथ) जुन व्यक्तितर्फ तिनीहरूको ध्यान (अन्यायपूर्वक) गइरहेछ त्यो व्यक्तिको भाषा त विदेशी रहेको छ, परन्तु यो भने स्पष्ट र शुद्ध अरवी भाषामा छ ।

وَ لَقَدْ نَعْلَمُ اَنَّهُمْ يَقُوْلُوْنَ اِنَّمَا يُعَلِّمُهٗ بَشَرٌ ؕ لِسَانُ الَّذِيْ يُلْحِدُوْنَ اِلَيْهِ اَعْجَمِيٌّ وَّ هٰذَا لِسَانٌ عَرَبِيٌّ مُّبِيْنٌ ﴿١٠٣﴾

१०५. ती व्यक्तिहरू जो अल्लाहका चिह्नहरूप्रति विश्वास गर्दैनन्, तिनीहरूलाई भने अल्लाहले कदापि सन्मार्ग देखाउने छैनन्, तथा तिनीहरूले यातनादायक दण्ड भोग्नेछन् ।

اِنَّ الَّذِيْنَ لَا يُؤْمِنُوْنَ بِاٰيٰتِ اللّٰهِ ۙ لَا يَهْدِيْهِمُ اللّٰهُ وَ لَهُمْ عَذَابٌ اَلِيْمٌ ﴿١٠٤﴾

१०६. जसले अल्लाहका चिह्नहरूप्रति विश्वास गर्दैनन् मिथ्या त केवल तिनीहरूले नै गढ्ने गर्छन्, तथा तिनीहरू नै

اِنَّمَا يَفْتَرِى الْكَذِبَ الَّذِيْنَ لَا يُؤْمِنُوْنَ بِاٰيٰتِ اللّٰهِ ۚ وَ اُولٰٓئِكَ هُمُ الْكٰذِبُوْنَ ﴿١٠٥﴾

मिथ्यावादी रहेका छन् ।

مَنْ كَفَرَ بِاللّٰهِ مِنْ بَعْدِ اِيْمَانِهٖٓ اِلَّا مَنْ اُكْرِهَ وَقَلْبُهٗ مُطْمَئِنٌّۢ بِالْاِيْمَانِ وَلٰكِنْ مَّنْ شَرَحَ بِالْكُفْرِ صَدْرًا فَعَلَيْهِمْ غَضَبٌ مِّنَ اللّٰهِ ۚ وَلَهُمْ عَذَابٌ عَظِيْمٌ ﴿١٠٦﴾

१०७. जसले विश्वास स्थापना गरेपश्चात् अल्लाहप्रति अविश्वास गर्छन् सिवाय त्यो व्यक्ति जसलाई (उसको सहनशक्तिभन्दा अधिक सहन वाध्य गरिन्छ) जबकि त्यसको हृदय भने आस्थाप्रति दृढ रहन्छ । परन्तु जसको हृदय (आस्थाको) अस्वीकार (पशचात पनि) सन्तुप्ट रहन्छ त्यस्ता व्यक्तिहरूमाथि (भने) अल्लाहको प्रकोप पर्न जान्छ, तथा तिनीहरूलाई कठोर दण्ड मिल्नेछ ।

ذٰلِكَ بِاَنَّهُمُ اسْتَحَبُّوا الْحَيٰوةَ الدُّنْيَا عَلَى الْاٰخِرَةِ ۙ وَاَنَّ اللّٰهَ لَا يَهْدِى الْقَوْمَ الْكٰفِرِيْنَ ﴿١٠٨﴾

१०८. तिनीहरूले यस सांसारिक जीवनलाई परलोकमाथि प्राथमिकता दिएका हुनाले तथा अल्लाहले अविश्वासी व्यक्तिहरूलाई मार्ग नदेखाउने हुनाले पनि त्यसो हुन जान्छ ।

اُولٰٓئِكَ الَّذِيْنَ طَبَعَ اللّٰهُ عَلٰى قُلُوْبِهِمْ وَسَمْعِهِمْ وَاَبْصَارِهِمْ ۚ وَاُولٰٓئِكَ هُمُ الْغٰفِلُوْنَ ﴿١٠٩﴾

१०९. जसका हृदय र कान तथा आँखालाई अल्लाहले मोहोरबन्दी गरेका छन् यी तिनै व्यक्तिहरू हुन् । तथा यिनीहरू चैतन्यरहित व्यक्तिहरू हुन् ।

لَا جَرَمَ اَنَّهُمْ فِى الْاٰخِرَةِ هُمُ الْخٰسِرُوْنَ ﴿١١٠﴾

११०. निस्सन्देह, परलोकमा घाटा उठाउने व्यक्तिहरू पनि यिनीहरू नै हुनेछन्

ثُمَّ اِنَّ رَبَّكَ لِلَّذِيْنَ هَاجَرُوْا مِنْۢ بَعْدِ مَا فُتِنُوْا ثُمَّ جٰهَدُوْا وَصَبَرُوْٓا ۙ اِنَّ رَبَّكَ مِنْۢ بَعْدِهَا لَغَفُوْرٌ رَّحِيْمٌ ﴿١١١﴾

१११. निश्चय नै, त्यसपछि तिम्रा प्रतिपालक ती व्यक्तिहरूप्रति जसले उत्पीडन सहन गरेपश्चात् (आफ्ना घरहरू) त्यागे, त्यसपछि (अल्लाहका मार्गमा) कठिन संघर्ष गरे तथा धैर्यधारण गरिरहे– (सुन), तत्पश्चात् निश्चय नै, तिम्रा प्रतिपालक परम क्षमाशील, परम दानशील रहेका छन् ।

يَوْمَ تَاْتِىْ كُلُّ نَفْسٍ تُجَادِلُ عَنْ نَّفْسِهَا وَتُوَفّٰى كُلُّ نَفْسٍ مَّا عَمِلَتْ وَهُمْ لَا يُظْلَمُوْنَ ﴿١١٢﴾

११२. त्यस दिन जब हरेक आत्मा आफ्नै निम्ति वकालत गर्दै उपस्थित हुनेछ, तथा हरेक आत्मालाई उसको कमाइ पूर्णरूपमा प्रदान गरिनेछ, तथा तिनीहरूमाथि कुनै

प्रकारको अत्याचार गरिनेछैन ।

وَضَرَبَ اللّٰهُ مَثَلًا قَرْيَةً كَانَتْ اٰمِنَةً مُّطْمَئِنَّةً يَّاْتِيْهَا رِزْقُهَا رَغَدًا مِّنْ كُلِّ مَكَانٍ فَكَفَرَتْ بِاَنْعُمِ اللّٰهِ فَاَذَاقَهَا اللّٰهُ لِبَاسَ الْجُوْعِ وَ الْخَوْفِ بِمَا كَانُوْا يَصْنَعُوْنَ ﴿١١٢﴾

११३. अल्लाह एउटा यस्तो नगरको दृष्टान्त प्रस्तुत गर्छन् जसलाई सुरक्षा र शान्ति प्राप्त थियो; चारैतर्फबाट त्यहाँ प्रशस्तरूपमा त्यसको खाद्यान्न आइरहेथ्यो; परन्तु त्यसले अल्लाहको अनुग्रहलाई अस्वीकार गर्‍यो, अतः अल्लाहले त्यहाँका बासिन्दाहरूलाई तिनीहरूले गर्ने गरेको कार्यहरूको फलस्वरूप भोक र त्रासपूर्ण जीवनको स्वाद चखाए (जुन) तिनीहरूका कार्यकलापका कारण वस्त्र (भैँ त्यसमा टाँसिन पुग्यो) ।

وَلَقَدْ جَآءَهُمْ رَسُوْلٌ مِّنْهُمْ فَكَذَّبُوْهُ فَاَخَذَهُمُ الْعَذَابُ وَهُمْ ظٰلِمُوْنَ ﴿١١٣﴾

११४. तथा निश्चयपूर्वक तिनीहरूसमक्ष तिनीहरूमध्ये कै एकजना सन्देशवाहकको आगमन भएको छ, परन्तु तिनीहरूले उनीसित एउटा मिथ्यावादी व्यक्तिसरह व्यवहार गरे. त्यसकारण अत्याचारी रहेकै अवस्थामा तिनीहरूलाई सजायले घेर्‍यो ।

فَكُلُوْا مِمَّا رَزَقَكُمُ اللّٰهُ حَلٰلًا طَيِّبًا وَّاشْكُرُوْا نِعْمَتَ اللّٰهِ اِنْ كُنْتُمْ اِيَّاهُ تَعْبُدُوْنَ ﴿١١٤﴾

११५. अतः अल्लाहले तिमीहरूका निम्ति उपलब्ध गराएका वस्तुहरूबाट वैध (र) पवित्र वस्तुहरू खाऊ तथा यदि तिमीहरू उनकै उपासना गर्छौ भने अल्लाहको अनुग्रहका कारण कृतज्ञ बन ।

اِنَّمَا حَرَّمَ عَلَيْكُمُ الْمَيْتَةَ وَالدَّمَ وَلَحْمَ الْخِنْزِيْرِ وَمَآ اُهِلَّ لِغَيْرِ اللّٰهِ بِهٖ فَمَنِ اضْطُرَّ غَيْرَ بَاغٍ وَّلَا عَادٍ فَاِنَّ اللّٰهَ غَفُوْرٌ رَّحِيْمٌ ﴿١١٥﴾

११६. उनले तिमीहरूका निम्ति केवल प्राकृतिकरूपमा मरेका जन्तुको मासु तथा रक्त र सुँगुरको मासु तथा त्यो वस्तु खानु अवैध ठहराएका छन्, जसमाथि अल्लाहलाई छाडी कुनै अरूको नाम उच्चारण गरिएको छ । परन्तु जो व्यक्ति स्वाद लिने अथवा सीमोल्लङ्घन गर्ने उद्देश्यबिनै अत्याधिक आवश्यकताका कारण बाध्य हुन जान्छ, त्यस अवस्थामा अल्लाह अवश्य परम क्षमाशील, परम दानशील रहेका छन् ।

وَلَا تَقُوْلُوْا لِمَا تَصِفُ اَلْسِنَتُكُمُ الْكَذِبَ هٰذَا حَلٰلٌ وَّ هٰذَا حَرَامٌ لِّتَفْتَرُوْا عَلَى اللّٰهِ الْكَذِبَ ؕ اِنَّ الَّذِيْنَ يَفْتَرُوْنَ عَلَى اللّٰهِ الْكَذِبَ لَا يُفْلِحُوْنَ ﴿۱۱۶﴾

११७. आफ्नो जिब्राको मिथ्या उच्चारणका साथ अल्लाहविरुद्ध मिथ्या गढ्नका निम्ति "त्यो वस्तु वैध हो, र त्यो अवैध हो,"– भनी भन्ने नगर । निश्चय नै, ती व्यक्तिहरू, जसले अल्लाहविरुद्ध मिथ्या गढ्छन् तिनीहरू (कदापि) कृतार्थ हुन सक्दैनन् ।

مَتَاعٌ قَلِيْلٌ ۪ وَّلَهُمْ عَذَابٌ اَلِيْمٌ ﴿۱۱۷﴾

११८. (एउटा) सामान्य उपलब्धि (पश्चात्) तिनीहरूका निम्ति यातनादायक दण्ड रहेको छ ।

وَعَلَى الَّذِيْنَ هَادُوْا حَرَّمْنَا مَا قَصَصْنَا عَلَيْكَ مِنْ قَبْلُ ۚ وَمَا ظَلَمْنٰهُمْ وَلٰكِنْ كَانُوْٓا اَنْفُسَهُمْ يَظْلِمُوْنَ ﴿۱۱۸﴾

११९. तथा यहुदीहरूका लागि (पनि) हामीले (यस)अघि ती सबै वस्तुहरू अवैध ठहऱ्याएका थियौं, जसको वर्णन हामीले तिमीसमक्ष गरेका छौं । तथा त्यसो गरेर हामीले तिनीहरूमाथि अत्याचार गरेका थिएनौं, परन्तु तिनीहरू स्वयम् आफूमाथि अत्याचार गर्ने गर्थे ।

ثُمَّ اِنَّ رَبَّكَ لِلَّذِيْنَ عَمِلُوا السُّوْٓءَ بِجَهَالَةٍ ثُمَّ تَابُوْا مِنْۢ بَعْدِ ذٰلِكَ وَاَصْلَحُوْٓا ۙ اِنَّ رَبَّكَ مِنْۢ بَعْدِهَا لَغَفُوْرٌ رَّحِيْمٌ ﴿۱۱۹﴾

१२०. त्यसपछि निश्चय नै तिम्रा प्रतिपालक ती व्यक्तिहरूप्रति जसले अज्ञानतापूर्वक अपकर्म गर्छन् र त्यसपछि प्रायश्चित गर्छन् तथा (आफ्नो) सुधार गर्छन् (सुन), त्यसपछि तिम्रा प्रतिपालक निश्चय नै, परम क्षमाशील, परम दानशील रहेका छन् ।

اِنَّ اِبْرٰهِيْمَ كَانَ اُمَّةً قَانِتًا لِّلّٰهِ حَنِيْفًا ؕ وَلَمْ يَكُ مِنَ الْمُشْرِكِيْنَ ﴿۱۲۰﴾

१२१. इब्राहिम सदा अल्लाहका आज्ञाकारी रहने, (उनी समक्ष) सदा नतमस्तक रहने स्वयम्मा एउटा जाति* (सम्प्रदाय)स्वरूप थिए, निस्सन्देह उनी मूर्तिपुजक व्यक्तिहरूमध्ये(का) थिएनन् ।"

شَاكِرًا لِّاَنْعُمِهٖ ؕ اِجْتَبٰىهُ وَهَدٰىهُ اِلٰى صِرَاطٍ مُّسْتَقِيْمٍ ﴿۱۲۱﴾

१२२. सदा उनको (अल्लाहको) अनुग्रहप्रति कृतज्ञ रहन्थे; उनले उनलाई

* इब्राहिम स्वयम्मा एउटा जाति(स्वरूप) थिए, भन्नुको अर्थ के हो भने उनमा उनलाई प्रतिश्रुति दिइएको एउटा महान जातिको बिउ र शक्ति(निहित) थियो ।

निर्वाचित गरे तथा उनलाई सन्मार्गतर्फ मार्गप्रदर्शन गरे ।

१२३. तथा हामीले उनलाई यस संसारमा मङ्गलदान गरेका थियौं, र परलोकमा उनी अवश्य सत्यनिष्ठ व्यक्तिहरूमध्ये (एक) हुनेछन् ।

وَاٰتَيْنٰهُ فِي الدُّنْيَا حَسَنَةً ۚ وَاِنَّهٗ فِي الْاٰخِرَةِ لَمِنَ الصّٰلِحِيْنَ ﴿١٢٢﴾

१२४. तथा (अहिले) हामीले तिमीमाथि (के भन्दै) यो आकाशवाणी गरेका छौं (भने), "तिनै इब्राहिमको मार्ग अनुसरण गर (जो) सदा (प्रतिपालकसमक्ष) नतमस्तक (रहन्थे) तथा उनी ती व्यक्तिहरूमध्येका थिएनन् जसले -उनका) भागीदार तुल्याउँछन् ।"

ثُمَّ اَوْحَيْنَآ اِلَيْكَ اَنِ اتَّبِعْ مِلَّةَ اِبْرٰهِيْمَ حَنِيْفًا ۚ وَمَا كَانَ مِنَ الْمُشْرِكِيْنَ ﴿١٢٣﴾

१२५. सबथ केवल ती व्यक्तिहरूमाथि लादिएको थियो जसले त्यस (इब्राहिम र उनको धर्म)बारे मतभेद (खडा) गरेका थिए, तथा जुनकुरामा तिनीहरू मतभेद राख्थे त्यसबारे तिम्रा प्रतिपालकले पुनरुत्थानका दिन तिनीहरूबीच निश्चय नै निर्णय गर्नेछन्* ।

اِنَّمَا جُعِلَ السَّبْتُ عَلَى الَّذِيْنَ اخْتَلَفُوْا فِيْهِ ۚ وَاِنَّ رَبَّكَ لَيَحْكُمُ بَيْنَهُمْ يَوْمَ الْقِيٰمَةِ فِيْمَا كَانُوْا فِيْهِ يَخْتَلِفُوْنَ ﴿١٢٤﴾

१२६. तत्त्वज्ञान र सदुपदेशकासाथ आफ्ना प्रतिपालकको मार्गतर्फ आह्वान गर, तथा सर्वोत्तम तरिकाले तिनीहरूसित तर्क गर । जो व्यक्तिहरू उनका मार्गबाट पथभ्रष्ट भएका छन् तिनीहरूलाई तिम्रा प्रतिपालकले निश्चय नै सर्वाधिक जान्दछन्;

اُدْعُ اِلٰى سَبِيْلِ رَبِّكَ بِالْحِكْمَةِ وَالْمَوْعِظَةِ الْحَسَنَةِ وَجَادِلْهُمْ بِالَّتِيْ هِيَ اَحْسَنُ ۚ اِنَّ رَبَّكَ هُوَ اَعْلَمُ بِمَنْ ضَلَّ عَنْ سَبِيْلِهٖ وَهُوَ اَعْلَمُ بِالْمُهْتَدِيْنَ ﴿١٢٥﴾

---

* टिप्पणी: उक्त विषयवस्तु स्पष्ट छ । इब्राहिम तथा अल्लाहको एकतावादप्रतिको उनको दृढ भक्ति र समर्पणबारे नै चर्चा हुँदैआएको छ । त्यसकारण इब्राहिम र इजरायिलीहरूका बीचमा उनको सत्यआस्था र चालचलनका सम्बन्धमा रहेको मतभिन्नताको नै यहाँ उल्लेख हुनुपर्छ । तिनीहरूमध्ये कतिपय व्यक्तिहरू विभिन्न प्रकारका मूर्तिपूजनका शिकार भएका थिए तथा तिनीहरूले आफ्ना ती कार्यहरूलाई उचित ठहराउनका निम्ति तिनीहरूको सम्बन्ध इब्राहिमसित गाँस्नु अति सम्भव छ । उक्त प्रसङ्गमा सबथ केवल एउटा विश्रामको दिनस्वरूप देखा परेको छैन अपितु एउटा पवित्रताप्राप्ति र प्रायश्चित गर्ने दिनको रूपमा समेत देखापरेको छ ।

तथा उनी सन्मार्ग प्राप्त व्यक्तिहरूलाई पनि) जान्दछन् ।

१२७. तथा यदि तिमीहरू उत्पीडनकारीहरूलाई दण्ड दिन चाहन्छौ भने, तिनीहरूलाई त्यही हदसम्म दण्ड देऊ जति तिमीहरूप्रति अत्याचार (उत्पीडन) गरिएको थियो; परन्तु यदि तिमीहरूले सहनशीलता प्रदर्शन गर्‍यौ भने, सहन गर्ने व्यक्तिहरूका निम्ति त्यो (कार्य) निश्चय नै मङ्गलमय हुनेछ ।

وَإِنْ عَاقَبْتُمْ فَعَاقِبُوا بِمِثْلِ مَا عُوقِبْتُمْ بِهِ ۖ وَلَئِنْ صَبَرْتُمْ لَهُوَ خَيْرٌ لِلصَّابِرِينَ ﴿١٢٦﴾

१२८. तथा धैर्यकासाथ तिमी सहन गर्ने गर; वस्तुतः अल्लाहको (सहयोगद्वारा) मात्र तिम्रो धैर्य (सम्भव) छ । तथा तिनीहरूका निम्ति दुखित नहोउ, न त तिनीहरूका योजनाहरूका कारण तिमी पीडाको अनुभव गर ।

وَاصْبِرْ وَمَا صَبْرُكَ إِلَّا بِاللَّهِ ۚ وَلَا تَحْزَنْ عَلَيْهِمْ وَلَا تَكُ فِي ضَيْقٍ مِمَّا يَمْكُرُونَ ﴿١٢٧﴾

१२९. वस्तुतः जुन व्यक्तिहरू धर्मपरायण छन् र जसले पुण्यकार्य गर्छन्, अल्लाह तिनीहरूसितै छन् ।

إِنَّ اللَّهَ مَعَ الَّذِينَ اتَّقَوْا وَالَّذِينَ هُمْ مُحْسِنُونَ ﴿١٢٨﴾

سُورَةُ بَنِيٓ إِسْرَآءِيلَ مَكِّيَّةٌ وَهِيَ مَعَ الْبَسْمَلَةِ مِائَةٌ وَّاثْنَا عَشَرَةَ آيَةً وَّاثْنَا عَشَرَ رُكُوعًا

## बनि इस्रा'ईल
(हिजरतअघि अवतरित)

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

२. उनी परम पवित्र रहेका छन् जसले आफ्ना सेवकलाई रात्रि समयमा पवित्र मस्जिदबाट त्यो टाढाको मस्जिदसम्म लिएर गए, जसका निकटवर्ती (स्थानहरू)लाई हामीले मङ्गलमय तुल्याएका छौं, ताकि उनलाई हामी आफ्ना (केही) चिह्नहरू देखाउन सकौं । निश्चय नै, केवल उनी नै सर्वश्रोता, सर्वद्रष्टा रहेका छन् ।

سُبْحٰنَ الَّذِيْٓ اَسْرٰى بِعَبْدِهٖ لَيْلًا مِّنَ الْمَسْجِدِ الْحَرَامِ اِلَى الْمَسْجِدِ الْاَقْصَا الَّذِيْ بٰرَكْنَا حَوْلَهٗ لِنُرِيَهٗ مِنْ اٰيٰتِنَا ۭ اِنَّهٗ هُوَ السَّمِيْعُ الْبَصِيْرُ ②

३. तथा हामीले मूसालाई पुस्तक प्रदान गरेका थियौं, र त्यसलाई (के भन्दै) इजरायलका सन्तानका निम्ति मार्गदर्शन तुल्याएका थियौ (भने), "मबाहेक अन्य कसैलाई संरक्षक नबनाऊ,"

وَاٰتَيْنَا مُوْسَى الْكِتٰبَ وَجَعَلْنٰهُ هُدًى لِّبَنِيْٓ اِسْرَاۗءِيْلَ اَلَّا تَتَّخِذُوْا مِنْ دُوْنِيْ وَكِيْلًا ③

४. "ए, हामीले नूहसित (नाउमा) सवार गराएका व्यक्तिहरूका सन्तति हो ।" उनी वास्तवमा एकजना कृतज्ञ सेवक थिए

ذُرِّيَّةَ مَنْ حَمَلْنَا مَعَ نُوْحٍ ۭ اِنَّهٗ كَانَ عَبْدًا شَكُوْرًا ④

५. तथा हामीले इजरायलका सन्तानप्रति (के भन्दै) पुस्तकमा आकाशवाणी गऱ्यौं (भने), "तिमीहरूले अवश्य त्यस देशमा दुइपटक फसाद गर्नेछौ, तथा तिमीहरू अवश्य अत्याधिक धृष्टतापूर्ण व्यवहार गर्नेछौ ।"

وَقَضَيْنَآ اِلٰى بَنِيْٓ اِسْرَاۗءِيْلَ فِي الْكِتٰبِ لَتُفْسِدُنَّ فِي الْاَرْضِ مَرَّتَيْنِ وَلَتَعْلُنَّ عُلُوًّا كَبِيْرًا ⑤

६. अत: जब दुई चेतावनीमध्ये पहिलो चेतावनी पूर्ण हुने समय आयो, हामीले तिमीहरूविरुद्ध हाम्रा केही भीषण युद्ध

فَاِذَا جَاۗءَ وَعْدُ اُوْلٰىهُمَا بَعَثْنَا عَلَيْكُمْ عِبَادًا لَّنَآ اُولِيْ بَاْسٍ شَدِيْدٍ فَجَاسُوْا خِلٰلَ الدِّيَارِ ۭ وَكَانَ وَعْدًا مَّفْعُوْلًا ⑥

कौशलयुक्त सेवकहरूलाई पठायौं, तथा तिनीहरू तिमीहरूका घरका भित्री भागमा प्रवेश गरे तथा त्यो एउटा अनिवार्यरूपमा पूर्ण हुने चेतावनी थियो ।

ثُمَّ رَدَدْنَا لَكُمُ الْكَرَّةَ عَلَيْهِمْ وَأَمْدَدْنٰكُمْ بِأَمْوَالٍ وَّبَنِيْنَ وَجَعَلْنٰكُمْ أَكْثَرَ نَفِيْرًا ﴿٦﴾

७. त्यसपछि पुनः हामीले तिमीहरूलाई उनीहरूविरुद्ध शक्ति प्रदान गर्‍यौं, तथा धन र सन्तानद्वारा हामीले तिमीहरूलाई सहयोग गर्‍यौं, तथा तिमीहरूको सङ्ख्या अधिक बढायौ ।

إِنْ أَحْسَنْتُمْ أَحْسَنْتُمْ لِأَنْفُسِكُمْ ۗ وَإِنْ أَسَأْتُمْ فَلَهَا ۚ فَإِذَا جَآءَ وَعْدُ الْاٰخِرَةِ لِيَسُوْٓءٗا وُجُوْهَكُمْ وَلِيَدْخُلُوا الْمَسْجِدَ كَمَا دَخَلُوْهُ أَوَّلَ مَرَّةٍ وَّلِيُتَبِّرُوْا مَا عَلَوْا تَتْبِيْرًا ﴿٧﴾

८. यदि तिमीहरूको आफ्नो चाल-चलन राम्रो भएमा तिमीहरूले आफ्नै आत्माको भलाई गर्नेछौ; तथा यदि तिमीहरू दुष्चलन भयौ भने तिनै (आत्माहरू) को भलाइविरुद्ध त्यसो गर्नेछौ । अतः जब पछिका दिनहरूको प्रतिश्रुत समय आउने तब तिनीहरूले तिमीहरुलाई अपमानित गर्नेछन्, तथा जुन मार्गबाट तिनीहरू पहिलो पटक प्रवेश गरेका थिए त्यहीँबाट मस्जिदमा (पुनः) प्रवेश गर्नेछन् तथा तिनीहरूले हत्याएका सम्पूर्ण वस्तुहरूलाई पूर्णरूपले ध्वस्त पार्नेछन् ।

عَسٰى رَبُّكُمْ أَنْ يَّرْحَمَكُمْ ۚ وَإِنْ عُدْتُّمْ عُدْنَا ۘ وَجَعَلْنَا جَهَنَّمَ لِلْكٰفِرِيْنَ حَصِيْرًا ﴿٨﴾

९. हुन सक्छ, तिमीहरूका प्रतिपालकले तिमीहरूमाथि (अब) करुणा गरून्; परन्तु यदि तिमीहरू (आफ्नो पुरानो अवस्थातर्फ) फर्क्यौं भने, हामी (पनि) फर्कनेछौं । तथा हामीले नर्कलाई अविश्वासी व्यक्तिहरूका निम्ति बन्दीगृहस्वरूप बनाएका छौं ।

إِنَّ هٰذَا الْقُرْاٰنَ يَهْدِيْ لِلَّتِيْ هِيَ أَقْوَمُ وَيُبَشِّرُ الْمُؤْمِنِيْنَ الَّذِيْنَ يَعْمَلُوْنَ الصّٰلِحٰتِ أَنَّ لَهُمْ أَجْرًا كَبِيْرًا ﴿٩﴾

१०. निश्चय नै, यो कुरानले सर्वाधिक शुद्ध (मार्ग) तर्फ मार्ग प्रदर्शन गर्छ; तथा पुण्यकार्य गर्ने विश्वासीजनलाई, तिनीहरूका निम्ति महान प्रतिदान रहेको छ भनी शुभसन्देश दिन्छ ।

وَّ اَنَّ الَّذِيْنَ لَا يُؤْمِنُوْنَ بِالْاٰخِرَةِ اَعْتَدْنَا لَهُمْ عَذَابًا اَلِيْمًا ۝١١

११. तथा जसले पछि आउने कुराहरूप्रति विश्वास गर्दैनन् तिनीहरूका निम्ति हामीले एउटा यातनादायक दण्ड तयार गरेका छौं ।

وَ يَدْعُ الْاِنْسَانُ بِالشَّرِّ دُعَآءَهٗ بِالْخَيْرِ ۚ وَ كَانَ الْاِنْسَانُ عَجُوْلًا ۝١٢

१२. तथा मानिसले अमङ्गललाई त्यसरी पुकार्छ जसरी उसले मङ्गलप्राप्तिको प्रार्थना गर्नु पर्थ्यो, तथा मानिस हडबडे हुन्छ ।

وَ جَعَلْنَا الَّيْلَ وَ النَّهَارَ اٰيَتَيْنِ فَمَحَوْنَاۤ اٰيَةَ الَّيْلِ وَ جَعَلْنَاۤ اٰيَةَ النَّهَارِ مُبْصِرَةً لِّتَبْتَغُوْا فَضْلًا مِّنْ رَّبِّكُمْ وَ لِتَعْلَمُوْا عَدَدَ السِّنِيْنَ وَ الْحِسَابَ ؕ وَ كُلَّ شَيْءٍ فَصَّلْنٰهُ تَفْصِيْلًا ۝١٣

१३. तथा हामीले रात्रि र दिनलाई दुईवटा चिह्नहरूस्वरूप बनाएका छौं, तथा रात्रिको चिह्नलाई हामीले (त्यसलाई दिनमा पुनर्स्थापना गरी) मेटाएका छौं, तथा दिनको चिह्नलाई हामीले प्रकाशपूर्ण बनाएका छौं, ताकि तिमीहरू आफ्ना प्रतिपालक को कृपाप्राप्तिको चेष्टा गर, तथा तिमीहरू सालहरूको गणना र लेखा (विज्ञान) जान्न सक । तथा प्रत्येक वस्तुलाई हामीले विस्तृतरूपमा व्याख्या गरेका छौं ।

وَ كُلَّ اِنْسَانٍ اَلْزَمْنٰهُ طٰٓئِرَهٗ فِيْ عُنُقِهٖ ؕ وَ نُخْرِجُ لَهٗ يَوْمَ الْقِيٰمَةِ كِتٰبًا يَّلْقٰىهُ مَنْشُوْرًا ۝١٤

१४. तथा हरेक व्यक्तिको कार्यहरूको विवरणलाई हामीले उसको गर्धनमा बाँधिदिएका छौं; तथा पुनरुत्थानका दिन हामी उसका निम्ति एउटा पुस्तक प्रस्तुत गर्नेछौं जसलाई उसले पूर्णरूपले खुल्ला पाउनेछ ।

اِقْرَاْ كِتٰبَكَ ؕ كَفٰى بِنَفْسِكَ الْيَوْمَ عَلَيْكَ حَسِيْبًا ۝١٥

१५. "आफ्नो किताब पढ । तिम्रो आफ्नै आत्मा आज तिमीविरुद्ध हिसाबीस्वरूप पर्याप्त रहेको छ ।

مَنِ اهْتَدٰى فَاِنَّمَا يَهْتَدِيْ لِنَفْسِهٖ ۚ وَ مَنْ ضَلَّ فَاِنَّمَا يَضِلُّ عَلَيْهَا ؕ وَ لَا تَزِرُ وَازِرَةٌ وِّزْرَ اُخْرٰى ؕ وَ مَا كُنَّا مُعَذِّبِيْنَ حَتّٰى نَبْعَثَ رَسُوْلًا ۝١٦

१६. त्यो व्यक्ति, जसले सन्मार्गको अनुसरण गर्छ उसले त्यसलाई (आफ्नै) आत्माको (मङ्गल साधनका) निम्ति अनुसरण गर्छः तथा त्यो व्यक्ति, जो पथभ्रष्ट हुनजान्छ त्यो (आफ्नै) हानि गर्नका निम्ति पथभ्रष्ट हुन्छ । तथा कुनै भारी बोक्ने व्यक्तिले पनि अर्काको भारी

बोक्ने छैन । जबसम्म हामी कुनै सन्देशवाहकलाई पठाउदैनौं तबसम्म हामी कदापि दण्ड दिदैनौं ।

१७. तथा जब हामी कुनै नगरलाई ध्वस्त गर्ने दृढ-निश्चय गर्छौं, हामी त्यहाँका समृद्ध व्यक्तिहरूलाई (तिनीहरूको इच्छानुसार कार्य गर्ने) अनुमति दिन्छौं अतः तिनीहरू त्यहाँ सबै प्रकारका पापहरूमा व्यस्त हुन्छन्, त्यसै क्रममा त्यसमाथि (दण्डको) आदेश अवश्यम्भावी हुन जान्छ, तथा हामी त्यसलाई पूर्वरूपले ध्वस्त पार्छौं ।

وَإِذَآ أَرَدْنَآ أَن نُّهْلِكَ قَرْيَةً أَمَرْنَا مُتْرَفِيهَا فَفَسَقُوا۟ فِيهَا فَحَقَّ عَلَيْهَا ٱلْقَوْلُ فَدَمَّرْنَٰهَا تَدْمِيرًا ﴿١٦﴾

१८. नूहपछि हामीले कति नै पुस्ताहरूलाई ध्वस्त गरिसक्यौं ! तथा तिम्रा प्रतिपालक आफ्ना सेवकहरूका पापहरू जान्ने र देख्नेस्वरूप यथेष्ट रहेका छन् ।

وَكَمْ أَهْلَكْنَا مِنَ ٱلْقُرُونِ مِنۢ بَعْدِ نُوحٍ ۗ وَكَفَىٰ بِرَبِّكَ بِذُنُوبِ عِبَادِهِۦ خَبِيرًۢا بَصِيرًا ﴿١٧﴾

१९. जुन व्यक्तिले वर्तमान जीवनको चाहना राख्छ, (तिनीहरूमध्ये) जसलाई हामी चाहन्छौं त्यस्तालाई हामी त्यहाँ हाम्रो इच्छानुसार शीघ्र लाभ पुऱ्याउछौं; त्यसपछि त्यसका निम्ति नर्क नियुक्त गरिदिन्छौं; जहाँ त्यो व्यक्ति घृणित (र) तिरस्कृत भई जल्न पुग्नेछ ।

مَّن كَانَ يُرِيدُ ٱلْعَاجِلَةَ عَجَّلْنَا لَهُۥ فِيهَا مَا نَشَآءُ لِمَن نُّرِيدُ ثُمَّ جَعَلْنَا لَهُۥ جَهَنَّمَ يَصْلَىٰهَا مَذْمُومًا مَّدْحُورًا ﴿١٨﴾

२०. तथा जसले परलोकको चाहना राख्छ र त्यसका निम्ति स्वयम् विश्वासी रहेको अवस्थामा उचित ढंगले सङ्घर्ष गर्छ,– तिनीहरू नै यस्ता व्यक्तिहरू हुन् जसको सङ्घर्ष (अल्लाहको दृष्टिमा) सम्मानयोग्य हुनेछ ।

وَمَنْ أَرَادَ ٱلْـَٔاخِرَةَ وَسَعَىٰ لَهَا سَعْيَهَا وَهُوَ مُؤْمِنٌ فَأُو۟لَٰٓئِكَ كَانَ سَعْيُهُم مَّشْكُورًا ﴿١٩﴾

२१. सबैलाई नै हामी सहयोग पुऱ्याउँछौं- यिनीहरू र तिनीहरू दुबैलाई– जो तिम्रा प्रतिपालक का तर्फबाट एउटा उपहार हो । तथा तिम्रा प्रतिपालक को

كُلًّا نُّمِدُّ هَٰٓؤُلَآءِ وَهَٰٓؤُلَآءِ مِنْ عَطَآءِ رَبِّكَ ۚ وَمَا كَانَ عَطَآءُ رَبِّكَ مَحْظُورًا ﴿٢٠﴾

उपहारलाई रोक्नु सम्भव छैन ।

२२. हेर, (वर्तमान जीवनमा) तिनीहरूमध्ये केहीलाई अन्य केहीमाथि हामीले कसरी श्रेष्ठता प्रदान गरेका छौं; तथा परलोक त निश्चय नै उच्च पदयुक्त र श्रेष्ठतामा उच्चतम हुनेछ ।

انْظُرْ كَيْفَ فَضَّلْنَا بَعْضَهُمْ عَلَىٰ بَعْضٍ ۚ وَلَلْآخِرَةُ أَكْبَرُ دَرَجَاتٍ وَأَكْبَرُ تَفْضِيلًا ﴿٢١﴾

२३. अल्लाहसित अन्य कुनै उपास्यलाई स्थापना नगर अन्यथा तिमी अपमानित (तथा) असहाय भएर बस्न पुग्नेछौ ।

لَا تَجْعَلْ مَعَ اللَّهِ إِلَٰهًا آخَرَ فَتَقْعُدَ مَذْمُومًا مَخْذُولًا ﴿٢٢﴾

२४. तिम्रा प्रतिपालक ले (के) आदेश दिएका छन् (भने), "उनीबाहेक अन्य कसैको उपासना नगर, तथा माता-पिताप्रति दयापूर्ण व्यवहार गर । यदि तिनीहरूमध्ये एकजना अथवा तिनीहरू दुबैजना तिम्रो उपस्थितिमा वृद्धावस्थामा प्रवेश गरेमा तिनीहरूसित घृणाभाव प्रकट गर्ने शब्द कदापि प्रयोग नगर न त तिनीहरूलाई तिरस्कार नै गर, परन्तु उनीहरूलाई ममतापूर्ण शब्दहरूद्वारा सम्बोधन गर्ने गर ।

وَقَضَىٰ رَبُّكَ أَلَّا تَعْبُدُوا إِلَّا إِيَّاهُ وَبِالْوَالِدَيْنِ إِحْسَانًا ۚ إِمَّا يَبْلُغَنَّ عِنْدَكَ الْكِبَرَ أَحَدُهُمَا أَوْ كِلَاهُمَا فَلَا تَقُلْ لَهُمَا أُفٍّ وَلَا تَنْهَرْهُمَا وَقُلْ لَهُمَا قَوْلًا كَرِيمًا ﴿٢٣﴾

२५. तथा तिनीहरू दुबैलाई विनयपूर्वक दयाको पखेटाले ढाकेर राख । तथा (के) प्रार्थनागर (भने), "हे मेरा प्रतिपालक , तिनीहरूमाथि दया गर जसरी उनीहरूले बाल्यकालमा (मेरो) पालन-पोषण गरेका थिए ।"

وَاخْفِضْ لَهُمَا جَنَاحَ الذُّلِّ مِنَ الرَّحْمَةِ وَقُلْ رَبِّ ارْحَمْهُمَا كَمَا رَبَّيَانِي صَغِيرًا ﴿٢٤﴾

२६. तिमीहरूका मनमा रहेका कुराहरूलाई तिमीहरूका प्रतिपालक ले राम्रो जान्दछन्; यदि तिमीहरू सत्यनिष्ठ रहेका छौ भने निश्चय नै उनी ती व्यक्तिहरका निम्ति, जो बारम्बार (उनीतर्फ) झुक्ने गर्छन्, परम क्षमाशील रहेका छन् ।

رَبُّكُمْ أَعْلَمُ بِمَا فِي نُفُوسِكُمْ ۚ إِنْ تَكُونُوا صَالِحِينَ فَإِنَّهُ كَانَ لِلْأَوَّابِينَ غَفُورًا ﴿٢٥﴾

وَاٰتِ ذَا الْقُرْبٰى حَقَّهٗ وَالْمِسْكِيْنَ وَابْنَ السَّبِيْلِ وَلَا تُبَذِّرْ تَبْذِيْرًا ﴿٢٦﴾

२७. तथा तिम्रो निकट सम्बन्धीलाई उसको अधिकार प्रदान गर, तथा दरिद्र र पथिकलाई (पनि), तथा (आफ्नो सम्पत्ति) अपव्यय नगर ।

اِنَّ الْمُبَذِّرِيْنَ كَانُوْٓا اِخْوَانَ الشَّيٰطِيْنِ ۭ وَكَانَ الشَّيْطٰنُ لِرَبِّهٖ كَفُوْرًا ﴿٢٧﴾

२८. वस्तुतः अपव्यय गर्ने व्यक्तिहरू सैतानका भाइबन्धु हुन् तथा सैतान आफ्ना प्रतिपालक प्रति अकृतज्ञ रहेको छ ।

وَاِمَّا تُعْرِضَنَّ عَنْهُمُ ابْتِغَاۗءَ رَحْمَةٍ مِّنْ رَّبِّكَ تَرْجُوْهَا فَقُلْ لَّهُمْ قَوْلًا مَّيْسُوْرًا ﴿٢٨﴾

२९. तथा यदि तिमी आफूले आशा गरेको, आफ्ना प्रतिपालक को करुणा प्राप्तिका निम्ति तिनीहरूबाट अलग हुनु परे (तापनि) तिनीहरूसित मधुर बचनका साथ वार्ता गर्ने गर ।

وَلَا تَجْعَلْ يَدَكَ مَغْلُوْلَةً اِلٰى عُنُقِكَ وَلَا تَبْسُطْهَا كُلَّ الْبَسْطِ فَتَقْعُدَ مَلُوْمًا مَّحْسُوْرًا ﴿٢٩﴾

३०. तथा तिमी (पूर्ण कृपणतापूर्वक) आफ्ना हातले आफ्नै गर्धन नबेर, तथा न त त्यसलाई अतिव्ययी बनी पूर्णरूपमा फैलाउ; अन्यथा तिमी अन्तमा पूर्णतयाः आरोपित (तथा) विफल भएर बस्नेछौ ।

اِنَّ رَبَّكَ يَبْسُطُ الرِّزْقَ لِمَنْ يَّشَاۗءُ وَيَقْدِرُ ۭ اِنَّهٗ كَانَ بِعِبَادِهٖ خَبِيْرًۢا بَصِيْرًا ﴿٣٠﴾

३१. निश्चय नै, तिम्रा प्रतिपालक ले जसलाई इच्छा गर्छन् त्यसका निम्ति (आफ्नो) जीविका विस्तृत तुल्याइदिन्छन्, तथा (जसका निम्ति उनले इच्छा गर्छन् त्यसलाई) सङ्कीर्ण तुल्याउँछन् । वस्तुतः उनी आफ्ना सेवकहरूलाई राम्ररी जान्दछन् (तथा) देख्छन्

وَلَا تَقْتُلُوْٓا اَوْلَادَكُمْ خَشْيَةَ اِمْلَاقٍ ۭ نَحْنُ نَرْزُقُهُمْ وَاِيَّاكُمْ ۭ اِنَّ قَتْلَهُمْ كَانَ خِطْاً كَبِيْرًا ﴿٣١﴾

३२. दरिद्रताको डरले आफ्ना सन्तानको हत्या नगर । हामी नै तिमीहरूलाई र तिनीहरूलाई पनि जीविका प्रदान गर्छौं । तिनीहरूको हत्या गर्ने कार्य निश्चय नै ठूलो पाप हो ।

وَلَا تَقْرَبُوا الزِّنٰٓى اِنَّهٗ كَانَ فَاحِشَةً ۭ وَسَاۗءَ سَبِيْلًا ﴿٣٢﴾

३३. तथा व्यभिचारका निकट कदापि नजाउ, निश्चय नै, त्यो एउटा निर्लज्जापूर्ण वस्तु र कुमार्ग पनि हो ।

وَلَا تَقْتُلُوا النَّفْسَ الَّتِي حَرَّمَ اللَّهُ إِلَّا بِالْحَقِّ ۗ وَمَن قُتِلَ مَظْلُومًا فَقَدْ جَعَلْنَا لِوَلِيِّهِ سُلْطَانًا فَلَا يُسْرِف فِّي الْقَتْلِ ۖ إِنَّهُ كَانَ مَنصُورًا ﴿٣٣﴾

३४. तथा न्यायोचित कारणबिना अल्लाहले निषिद्ध ठहऱ्याएको ज्यानलाई नमार । तथा जुन व्यक्ति अन्यायपूर्वक मारिन्छ, त्यसको वारिसलाई हामीले (बराबरको बदला लिने) अधिकार प्रदान गरेका छौं । परन्तु त्यस व्यक्तिले हत्या गर्ने कार्यमा (निर्धारित) सीमारेखाको उल्लङ्घन नगरोस्; त्यसो भएमा नै (कानुनले) उसलाई सहयोग गर्नेछ ।

وَلَا تَقْرَبُوا مَالَ الْيَتِيمِ إِلَّا بِالَّتِي هِيَ أَحْسَنُ حَتَّىٰ يَبْلُغَ أَشُدَّهُ ۚ وَأَوْفُوا بِالْعَهْدِ ۖ إِنَّ الْعَهْدَ كَانَ مَسْئُولًا ﴿٣٤﴾

३५. अनाथले परिपक्वताको उमेर प्राप्त नगरुञ्जेल उसको सम्पत्तिका निकट उचित मार्ग छोडी नजाऊ, तथा आफ्नो अङ्गीकार पूर्ण गर; किनभने अङ्गीकारबारे अवश्य सोधपुछ गरिनेछ ।

وَأَوْفُوا الْكَيْلَ إِذَا كِلْتُمْ وَزِنُوا بِالْقِسْطَاسِ الْمُسْتَقِيمِ ۚ ذَٰلِكَ خَيْرٌ وَأَحْسَنُ تَأْوِيلًا ﴿٣٥﴾

३६. तथा जब तिमीहरू माप्छौ पूरा माप दिने गर, तथा सही तराजु राखेर जोख्ने गर; यही कुरा सर्वोत्तम तथा परिणामस्वरूप प्रशंसनीय रहेको छ ।

وَلَا تَقْفُ مَا لَيْسَ لَكَ بِهِ عِلْمٌ ۚ إِنَّ السَّمْعَ وَالْبَصَرَ وَالْفُؤَادَ كُلُّ أُولَٰئِكَ كَانَ عَنْهُ مَسْئُولًا ﴿٣٦﴾

३७. जुन कुराको तिमीलाई ज्ञान प्राप्त छैन त्यस कुराको पछि नलाग । वस्तुतः कान, आँखा तथा हृदय-यी सबैबारे प्रश्न गरिनेछ ।

وَلَا تَمْشِ فِي الْأَرْضِ مَرَحًا ۖ إِنَّكَ لَن تَخْرِقَ الْأَرْضَ وَلَن تَبْلُغَ الْجِبَالَ طُولًا ﴿٣٧﴾

३८. दाम्भिक भइ पृथ्वीमा हिँड्ने नगर, किनभने तिमीले पृथ्वीलाई चिर्न सक्नेछैनौ, न त तिमी पर्वतको शिखर समान उच्च नै हुन सक्नेछौ ।

كُلُّ ذَٰلِكَ كَانَ سَيِّئُهُ عِندَ رَبِّكَ مَكْرُوهًا ﴿٣٨﴾

३९. तिम्रा प्रतिपालक का दृष्टिमा यस्ता सम्पूर्ण (आचरणहरू)को निकृष्टता निन्दनीय रहेका छन् ।

ذَٰلِكَ مِمَّا أَوْحَىٰ إِلَيْكَ رَبُّكَ مِنَ الْحِكْمَةِ ۗ وَلَا تَجْعَلْ مَعَ اللَّهِ إِلَٰهًا آخَرَ فَتُلْقَىٰ فِي جَهَنَّمَ مَلُومًا مَّدْحُورًا ﴿٣٩﴾

४०. यो त्यस तत्व ज्ञानको अंश हो जुन तिम्रा प्रतिपालक ले तिमीप्रति आकाशवाणी गरेका छन् । तथा अल्लाहसित अन्य कुनै उपास्य स्थापित नगर, अन्यथा तिमीलाई

निन्दित (र) तिरस्कृत तुल्याई नर्कमा हालिनेछ

४१. अतः के तिमीहरूलाई भने पुत्रहरूद्वारा तिमीहरूका प्रतिपालक ले सम्मानित तुल्याएका छन् र स्वयम्का निम्ति देवदूतहरूबाट पुत्रीहरू ग्रहण गरेका छन् त? तिमीहरू निश्चय नै एउटा भयानक कुरो गरिरहेछौ ।

أَفَأَصْفَاكُمْ رَبُّكُمْ بِالْبَنِينَ وَاتَّخَذَ مِنَ الْمَلَائِكَةِ إِنَاثًا ۚ إِنَّكُمْ لَتَقُولُونَ قَوْلًا عَظِيمًا ﴿٤٠﴾

४२. यस कुरानमा हामीले (सत्यलाई) विभिन्न तरिकाले व्याख्या गरेका छौं ताकि तिनीहरूले उपदेश ग्रहण गरुन्, परन्तु त्यसले त तिनीहरूमा केवल घृणा बृद्धि गरिरहेछ ।

وَلَقَدْ صَرَّفْنَا فِي هَٰذَا الْقُرْآنِ لِيَذَّكَّرُوا وَمَا يَزِيدُهُمْ إِلَّا نُفُورًا ﴿٤١﴾

४३. तिमी भन, "तिनीहरूको भनाइअनुसार यदि उनीसित अन्यान्य उपास्यहरू रहेका भए, तिनीहरूले (मूर्तिपुजकहरूले) अवश्य सिंहासनका स्वामीसम्म (पुग्ने) कुनै मार्ग खोजेर निकाल्ने थिए ।

قُلْ لَوْ كَانَ مَعَهُ آلِهَةٌ كَمَا يَقُولُونَ إِذًا لَابْتَغَوْا إِلَىٰ ذِي الْعَرْشِ سَبِيلًا ﴿٤٢﴾

४४. पवित्र छन् उनी, तथा तिनीहरूको भनाइभन्दा अति उच्च रहेका छन् ।

سُبْحَانَهُ وَتَعَالَىٰ عَمَّا يَقُولُونَ عُلُوًّا كَبِيرًا ﴿٤٣﴾

४५. सातैवटा आकाशमण्डल र पृथ्वी तथा तिनीहरूबीच रहेका सम्पूर्ण वस्तुहरू उनकै महिमाको गुणगान गर्छन्; तथा हरेक वस्तुले उनको प्रशंसाका साथ स्तुति गर्ने गर्छ; परन्तु तिमीहरूले तिनीहरूको स्तुतिलाई बुझ्दैनौ । वस्तुतः उनी परम सहिष्णु, परम क्षमाशील छन् ।

تُسَبِّحُ لَهُ السَّمَاوَاتُ السَّبْعُ وَالْأَرْضُ وَمَنْ فِيهِنَّ ۚ وَإِنْ مِنْ شَيْءٍ إِلَّا يُسَبِّحُ بِحَمْدِهِ وَلَٰكِنْ لَا تَفْقَهُونَ تَسْبِيحَهُمْ ۗ إِنَّهُ كَانَ حَلِيمًا غَفُورًا ﴿٤٤﴾

४६. तथा जब तिमी कुरानको पाठ गर्छौ, तिमीहरू र परलोकप्रति विश्वास नगर्ने व्यक्तिहरूका बीचमा हामी एउटा अदृश्य पर्दा कायम गरिदिन्छौं ।

وَإِذَا قَرَأْتَ الْقُرْآنَ جَعَلْنَا بَيْنَكَ وَبَيْنَ الَّذِينَ لَا يُؤْمِنُونَ بِالْآخِرَةِ حِجَابًا مَسْتُورًا ﴿٤٥﴾

وَّجَعَلْنَا عَلٰى قُلُوْبِهِمْ اَكِنَّةً اَنْ يَّفْقَهُوْهُ وَفِيْٓ اٰذَانِهِمْ وَقْرًا ۚ وَاِذَا ذَكَرْتَ رَبَّكَ فِى الْقُرْاٰنِ وَحْدَهٗ وَلَّوْا عَلٰٓى اَدْبَارِهِمْ نُفُوْرًا ﴿٤٧﴾

४७. तथा तिनीहरूको हृदयलाई हामीले आवरणले ढाकी दिएका छौं । त्यसकारण तिनीहरूले त्यसलाई बुझ्न सक्दैनन् तथा तिनीहरूका कानमा बहिरोपना रहेको छ । तथा जब तिमी कुरानमा आफ्ना एकमात्र प्रतिपालक को चर्चा गर्छौ, तिनीहरू घृणाका साथ पिठ्यूँ फर्काएर हिँड्छन् ।

نَحْنُ اَعْلَمُ بِمَا يَسْتَمِعُوْنَ بِهٖٓ اِذْ يَسْتَمِعُوْنَ اِلَيْكَ وَاِذْ هُمْ نَجْوٰٓى اِذْ يَقُوْلُ الظّٰلِمُوْنَ اِنْ تَتَّبِعُوْنَ اِلَّا رَجُلًا مَّسْحُوْرًا ﴿٤٨﴾

४८. हामी राम्ररी जान्दछौं जब तिनीहरू तिम्रा कुरा सुन्छन्, तिनीहरू के सुन्न चाहन्छन भन्ने कुरा र जब तिनीहरू एकान्तमा (परस्पर) कानेखुसी गर्छन्, (ती कुराहरू पनि), जब अत्याचारीहरू भन्छन्, "तिमीहरू त केवल एकजना धोकाग्रस्त व्यक्तिको अनुसरण गरिरहेछौ ।"

اُنْظُرْ كَيْفَ ضَرَبُوْا لَكَ الْاَمْثَالَ فَضَلُّوْا فَلَا يَسْتَطِيْعُوْنَ سَبِيْلًا ﴿٤٩﴾

४९. हेर, तिनीहरूले तिम्रा सम्बन्धमा कस्ता दृष्टान्तहरू गढेका छन्, फलस्वरूप तिनीहरू पथभ्रष्ट हुन पुगेका छन् त्यसकारण तिनीहरूलाई कुनै मार्ग नै प्राप्त हुन सक्दैन ।

وَقَالُوْٓا ءَاِذَا كُنَّا عِظَامًا وَّرُفَاتًا ءَاِنَّا لَمَبْعُوْثُوْنَ خَلْقًا جَدِيْدًا ﴿٥٠﴾

५०. तथा तिनीहरू भन्छन्, "के जब हामी हाडखोडमा परिणत हुनेछौं र कण-कण बन्नेछौं, हामीलाई साँच्चै नै नवीन सृष्टिस्वरूप उत्थान गरिनेछ त?"

قُلْ كُوْنُوْا حِجَارَةً اَوْ حَدِيْدًا ﴿٥١﴾

५१. तिमी भन, "तिमीहरू ढुङ्गा बन अथवा फलाम,

اَوْ خَلْقًا مِّمَّا يَكْبُرُ فِيْ صُدُوْرِكُمْ ۚ فَسَيَقُوْلُوْنَ مَنْ يُّعِيْدُنَا ۗ قُلِ الَّذِيْ فَطَرَكُمْ اَوَّلَ مَرَّةٍ ۚ فَسَيُنْغِضُوْنَ اِلَيْكَ رُءُوْسَهُمْ وَيَقُوْلُوْنَ مَتٰى هُوَ ۗ قُلْ عَسٰٓى اَنْ يَّكُوْنَ قَرِيْبًا ﴿٥٢﴾

५२. अथवा तिमीहरूको सोचाइमा ती वस्तुहरू भन्दा अझ कठोर रहेको (कुनै प्रकारको) सृष्टि बन, (तथापि तिमीहरूलाई पुनः उत्थान गरिनेछ) । त्यसपछि तिनीहरूले सोध्नेछन्, "कसले हामीलाई फर्काउने छ त ?" तिमी भन, "उनैले, जसले तिमीहरूलाई पहिलो पटक सृष्टि गरेका थिए ।" त्यसपछि तिनीहरूले तिमीतर्फ हेर्दै टाउको हल्लाउनेछन् र

भन्नेछन्, "कहिले त्यो कार्य हुनेछ त?" तिमी भन, "सम्भवतः यो शीघ्र नै हुनेछ,"

५३. "(त्यो) त्यस दिन हुनेछ जब उनले तिमीहरूलाई बोलाउने छन्; तब तिमीहरूले उनको प्रशंसाका साथ उत्तर दिनेछौ तथा तिमीहरू संसारमा थोरै क्षणमात्र रहेका थियौ भन्ने कुरा तिमीहरूले सोच्नेछौ ।"

يَوْمَ يَدْعُوكُمْ فَتَسْتَجِيبُونَ بِحَمْدِهِ وَتَظُنُّونَ إِن لَّبِثْتُمْ إِلَّا قَلِيلًا ﴿٥٣﴾

५४. तथा मेरा सेवकहरूलाई तिनीहरूले केवल उत्तम कुरा गर्ने गरुन भनी तिमी भनिदेउ । सैतानले निश्चय नै तिनीहरूका बीचमा अनैक्य सिर्जन गर्ने गर्छ । निःसन्देह सैतान मानिसको खुल्लमखुल्ला दुश्मन हो

وَقُل لِّعِبَادِي يَقُولُوا الَّتِي هِيَ أَحْسَنُ ۚ إِنَّ الشَّيْطَانَ يَنزَغُ بَيْنَهُمْ ۚ إِنَّ الشَّيْطَانَ كَانَ لِلْإِنسَانِ عَدُوًّا مُّبِينًا ﴿٥٤﴾

५५. तिमीहरूका प्रतिपालक ले तिमीहरूलाई राम्ररी चिन्दछन् । उनले चाहेमा उनले तिमीहरूमाथि करुणा गर्नेछन्; अथवा (यदि उनले चाहेमा) तिमीहरूलाई उनले दण्ड दिनेछन् । तथा तिमीलाई हामीले तिनीहरूमाथि एकजना संरक्षकस्वरूप पठाएका होइनौं ।

رَّبُّكُمْ أَعْلَمُ بِكُمْ ۖ إِن يَشَأْ يَرْحَمْكُمْ أَوْ إِن يَشَأْ يُعَذِّبْكُمْ ۚ وَمَا أَرْسَلْنَاكَ عَلَيْهِمْ وَكِيلًا ﴿٥٥﴾

५६. आकाशमण्डल र पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरूलाई तिम्रा प्रतिपालक ले राम्ररी जान्दछन् । तथा हामीले केही नबी (सिद्ध)हरूलाई अन्य केही नबीहरूमाथि श्रेष्ठता प्रदान गरेका थियौं; तथा हामीले दाऊदलाई ज़बूर* प्रदान गरेका थियौं ।

وَرَبُّكَ أَعْلَمُ بِمَن فِي السَّمَاوَاتِ وَالْأَرْضِ ۗ وَلَقَدْ فَضَّلْنَا بَعْضَ النَّبِيِّينَ عَلَىٰ بَعْضٍ ۖ وَآتَيْنَا دَاوُودَ زَبُورًا ﴿٥٦﴾

५७. तिमी भन, "उनीबाहेक जसलाई तिमीहरू (उपास्य हुन् भनी) ठान्छौ तिनीहरूलाई पुकार; तब तिनीहरूमा तिमीहरूको सङ्कट दूर गर्ने अथवा (त्यसलाई) परिवर्तन गर्ने क्षमता रहेको छैन

قُلِ ادْعُوا الَّذِينَ زَعَمْتُم مِّن دُونِهِ فَلَا يَمْلِكُونَ كَشْفَ الضُّرِّ عَنكُمْ وَلَا تَحْوِيلًا ﴿٥٧﴾

---

* "ज़बूर" को अर्थ स्तुतिगान हो ।

(भन्ने कुरा तिमीहरूलाई ज्ञान हुनेछ) ।

أُولَٰٓئِكَ الَّذِينَ يَدْعُونَ يَبْتَغُونَ إِلَىٰ رَبِّهِمُ الْوَسِيلَةَ أَيُّهُمْ أَقْرَبُ وَيَرْجُونَ رَحْمَتَهُ وَيَخَافُونَ عَذَابَهُ ۚ إِنَّ عَذَابَ رَبِّكَ كَانَ مَحْذُورًا ﴿٥٨﴾

५८. जसलाई तिनीहरू पुकार्छन् (तिनीहरू स्वयम्) आफ्ना प्रतिपालक को निकटता चाहन्छन्- उनीहरूमध्ये को (चाहिँ) निकटतम व्यक्ति रहेको छ भनी- तथा उनको करुणा (प्राप्ति)को आशा राख्छन् तथा उनको दण्डदेखि डराउँछन् । तिम्रा प्रतिपालक को दण्ड निश्चयपूर्वक डराउनेलायक वस्तु रहेको छ ।

وَإِن مِّن قَرْيَةٍ إِلَّا نَحْنُ مُهْلِكُوهَا قَبْلَ يَوْمِ الْقِيَامَةِ أَوْ مُعَذِّبُوهَا عَذَابًا شَدِيدًا ۚ كَانَ ذَٰلِكَ فِي الْكِتَابِ مَسْطُورًا ﴿٥٩﴾

५९. कुनै यस्तो शहर छैन जसलाई हामी पुनरुत्थानका दिनभन्दा पहिला नै ध्वस्त पार्नेछैनौं अथवा कठोर दण्ड दिनेछैनौं । यो कुरा पुस्तकमा लिपिवद्ध रहेको छ ।

وَمَا مَنَعَنَا أَن نُّرْسِلَ بِالْآيَاتِ إِلَّا أَن كَذَّبَ بِهَا الْأَوَّلُونَ ۚ وَآتَيْنَا ثَمُودَ النَّاقَةَ مُبْصِرَةً فَظَلَمُوا بِهَا ۚ وَمَا نُرْسِلُ بِالْآيَاتِ إِلَّا تَخْوِيفًا ﴿٦٠﴾

६०. चिह्नहरू पठाउनबाट कुनै कुराले हामीलाई अवरोध गर्न सक्दैन, परन्तु के भने अतीतका मानिसहरूले तिनीहरूलाई अस्वीकार गरेका थिए, (तर यो कुनै रोक होइन) । तथा हामीले समूदलाई एउटा पोथी ऊँट स्पष्ट चिह्नस्वरूप प्रदान गरेका थियौं, परन्तु तिनीहरूले त्यसलाई अन्यायपूर्वक अस्वीकार गरे । तथा केवल सतर्क गर्नका निम्ति नै हामी चिह्नहरू पठाउने गर्छौं ।

وَإِذْ قُلْنَا لَكَ إِنَّ رَبَّكَ أَحَاطَ بِالنَّاسِ ۚ وَمَا جَعَلْنَا الرُّؤْيَا الَّتِي أَرَيْنَاكَ إِلَّا فِتْنَةً لِّلنَّاسِ وَالشَّجَرَةَ الْمَلْعُونَةَ فِي الْقُرْآنِ ۚ وَنُخَوِّفُهُمْ فَمَا يَزِيدُهُمْ إِلَّا طُغْيَانًا كَبِيرًا ﴿٦١﴾

६१. तथा (त्यस समयको स्मरण गर)- जब हामीले तिमीलाई भनेका थियौं, "निश्चय नै, तिम्रा प्रतिपालकले मानिसहरूलाई घेरिसकेका छन् ।" तथा हामीले तिमीलाई देखाएको (अलौकिक) दृश्य र कुरानमा उल्लेखित श्रापित वृक्षलाई पनि हामीले केवल मानिसहरूका निम्ति परीक्षाको साधन बनाएका थियौं । तथा हामी तिनीहरूलाई चेतावनी दिन्छौं, परन्तु त्यसले तिनीहरूलाई केवल घोर

विद्रोहतर्फ अग्रसर गराइरहेछ ।

६२. तथा (त्यस समयको स्मरण गर) जब हामीले देवदूतहरूलाई भन्यौं, "आदमको आज्ञापालन गर", तथा इब्लिसबाहेक तिनीहरू सबैले आदमको आज्ञापालन गरे । उसले भन्यो, "के म त्यसको आज्ञापालन गरुँ जसलाई तिमीले हिलो -माटो)ले सिर्जना गरेका छौ?"

وَإِذْ قُلْنَا لِلْمَلَٰٓئِكَةِ اسْجُدُوا لِآدَمَ فَسَجَدُوٓا إِلَّآ إِبْلِيسَ قَالَ ءَأَسْجُدُ لِمَنْ خَلَقْتَ طِينًا ﴿٦٢﴾

६३. तथा उसले भन्यो, "तिमीले के सोचेका छौ? के त्यो व्यक्ति जसलाई तिमीले मभन्दा मान्य (पूज्य) तुल्याएका छौ (मेरो मान्य हुन सक्छ र)? यदि तिमीले मलाई पुनरुत्थानका दिन्सम्म अवसर दियौ भने, थोरै व्यक्तिहरूबाहेक उसका (सम्पूर्ण) सन्तानहरूलाई म अवश्य नै आफ्ना वशमा गर्नेछु ।"

قَالَ أَرَءَيْتَكَ هَٰذَا الَّذِي كَرَّمْتَ عَلَيَّ لَئِنْ أَخَّرْتَنِ إِلَىٰ يَوْمِ الْقِيَٰمَةِ لَأَحْتَنِكَنَّ ذُرِّيَّتَهُۥٓ إِلَّا قَلِيلًا ﴿٦٣﴾

६४. उनले भने, "निस्किहाल ! तथा तिनीहरूमध्ये जसले तेरो अनुसरण गर्नेछन् नर्क नै अवश्य तिमीहरू सबैको प्रतिदान हुनेछ– एउटा पूर्ण प्रतिफल ।

قَالَ اذْهَبْ فَمَن تَبِعَكَ مِنْهُمْ فَإِنَّ جَهَنَّمَ جَزَآؤُكُمْ جَزَآءً مَّوْفُورًا ﴿٦٣﴾

६५. "तथा तिनीहरूमध्ये जसलाई सक्छस् आफ्नो आवाजले प्रलोभनमा पार, र तिनीहरूविरुद्ध आफ्ना घोडसवार र आफ्ना पैदल हिड्नेहरुलाई लिएर आ तथा तिनीहरूको धन सम्पत्ति र सन्तानमा भागीदार बन, तथा तिनीहरूलाई वचन दे ।" तथा सैतानले ता तिनीहरूलाई केवल धोकायुक्त वचन दिन्छ ।

وَاسْتَفْزِزْ مَنِ اسْتَطَعْتَ مِنْهُم بِصَوْتِكَ وَأَجْلِبْ عَلَيْهِم بِخَيْلِكَ وَرَجِلِكَ وَشَارِكْهُمْ فِي الْأَمْوَٰلِ وَالْأَوْلَٰدِ وَعِدْهُمْ وَمَا يَعِدُهُمُ الشَّيْطَٰنُ إِلَّا غُرُورًا ﴿٦٥﴾

६६. (जहाँसम्म) मेरा सेवकहरू ( को प्रश्न छ ) तिनीहरूमाथि भने कदापि तेरो सामर्थ्य चल्नेछैन, तथा संरक्षकस्वरूप तिम्रा प्रतिपालक पर्याप्त रहेका छन् ।

إِنَّ عِبَادِي لَيْسَ لَكَ عَلَيْهِمْ سُلْطَٰنٌ وَكَفَىٰ بِرَبِّكَ وَكِيلًا ﴿٦٦﴾

६७. तिमीहरूका प्रतिपालक उनै हुन् जसले समुद्रमा तिमीहरूका निम्ति जहाज चलाउँछन्, ताकि तिमीहरू उनको कृपा प्राप्त गर्ने चेष्टा गर, निश्चय नै तिमीहरूप्रति उनी अति दयाशील छन् ।

رَبُّكُمُ الَّذِي يُزْجِي لَكُمُ الْفُلْكَ فِي الْبَحْرِ لِتَبْتَغُوا مِن فَضْلِهِ ۚ إِنَّهُ كَانَ بِكُمْ رَحِيمًا

६८. तथा जब समुद्रमा तिमीहरूमाथि सङ्कट आइलाग्छ (तब) उनीलाई छाडी जसलाई तिमीहरू पुकार्छौ ती (सबै तिमीहरूबाट) विस्मरण हुन्छन् । परन्तु जब उनले तिमीहरूलाई सुरक्षित धर्तीमा पुऱ्याउँछन्, तिमीहरू एकातर्फ लाग्छौ; तथा मानिस अति नै कृतघ्न रहेको छ ।

وَإِذَا مَسَّكُمُ الضُّرُّ فِي الْبَحْرِ ضَلَّ مَن تَدْعُونَ إِلَّا إِيَّاهُ ۖ فَلَمَّا نَجَّاكُمْ إِلَى الْبَرِّ أَعْرَضْتُمْ ۚ وَكَانَ الْإِنسَانُ كَفُورًا

६९. उनले तिमीहरूलाई धर्तीको कुनै किनारामा धसाउने अथवा तिमीहरूमाथि धुलोमाटोयुक्त भयानक आँधी चलाउने (छैनन्) फलस्वरूप तिमीहरूलाई कोही संरक्षक मिल्नेछैन भन्ने कुराबाट तिमीहरू स्वयम्लाई सुरक्षित ठान्छौ त?

أَفَأَمِنتُمْ أَن يَخْسِفَ بِكُمْ جَانِبَ الْبَرِّ أَوْ يُرْسِلَ عَلَيْكُمْ حَاصِبًا ثُمَّ لَا تَجِدُوا لَكُمْ وَكِيلًا

७०. अथवा, उनले तिमीहरूलाई दोस्रो पटक त्यसतर्फ फर्काएर पठाउने (छैनन्) त्यसपछि तिमीहरूविरुद्ध एउटा भयानक आँधी पठाई तिमीहरूको अविश्वासकै कारण तिमीहरूलाई डुबाउने (छैनन्) भनी तिमीहरू ढुक्क पर्छौ? त्यस अवस्थामा तिमीहरूले स्वयम्का निम्ति हामीविरुद्ध कोही सहयोगी पाउनेछैनौ ।

أَمْ أَمِنتُمْ أَن يُعِيدَكُمْ فِيهِ تَارَةً أُخْرَىٰ فَيُرْسِلَ عَلَيْكُمْ قَاصِفًا مِّنَ الرِّيحِ فَيُغْرِقَكُم بِمَا كَفَرْتُمْ ۙ ثُمَّ لَا تَجِدُوا لَكُمْ عَلَيْنَا بِهِ تَبِيعًا

७१. वस्तुतः, हामीले आदमका सन्तानलाई सम्मानित तुल्याएका छौं, तथा तिनीहरूलाई धर्तीमा र समुद्रमा सवारी प्रदान गर्छौं, तथा तिनीहरूलाई उत्तम वस्तुहरू प्रदान गरेका छौं, र हाम्रा सृष्टिहरूमध्ये धेरै वस्तुहरूमाथि तिनीहरूलाई प्राधान्यता प्रदान गरेका छौं ।

وَلَقَدْ كَرَّمْنَا بَنِي آدَمَ وَحَمَلْنَاهُمْ فِي الْبَرِّ وَالْبَحْرِ وَرَزَقْنَاهُم مِّنَ الطَّيِّبَاتِ وَفَضَّلْنَاهُمْ عَلَىٰ كَثِيرٍ مِّمَّنْ خَلَقْنَا تَفْضِيلًا

يَوْمَ نَدْعُوا كُلَّ أُنَاسٍ بِإِمَامِهِمْ ۚ فَمَنْ أُوتِيَ كِتَابَهُ بِيَمِينِهِ فَأُولَٰئِكَ يَقْرَءُونَ كِتَابَهُمْ وَلَا يُظْلَمُونَ فَتِيلًا ﴿٧١﴾

७२. त्यस दिनको (स्मरण गर) जब हामी हरेक जातिलाई त्यसका नेतासहित बोलाउने छौं । तब जसलाई उसको पुस्तक उसको दाहिने हातमा दिइनेछ– त्यस्ता व्यक्तिहरुले आफ्नो पुस्तक पढ्नेछन्, तथा तिनीहरूमाथि एउटा सिन्को बराबर पनि अन्याय गरिनेछैन ।

وَمَنْ كَانَ فِي هَٰذِهِ أَعْمَىٰ فَهُوَ فِي الْآخِرَةِ أَعْمَىٰ وَأَضَلُّ سَبِيلًا ﴿٧٢﴾

७३. परन्तु जुन व्यक्ति यस संसारमा अन्धो रहन्छ त्यो परलोकमा पनि अन्धो, तथा मार्ग बाट अधिक पथभ्रष्ट हुन पुग्नेछ

وَإِنْ كَادُوا لَيَفْتِنُونَكَ عَنِ الَّذِي أَوْحَيْنَا إِلَيْكَ لِتَفْتَرِيَ عَلَيْنَا غَيْرَهُ ۖ وَإِذًا لَاتَّخَذُوكَ خَلِيلًا ﴿٧٣﴾

७४. तथा हामीले तिमीमाथि अवतीर्ण गरेको कुरोलाई लिएर तिनीहरूले तिमीलाई विपदग्रस्त तुल्याउनै लागेका थिए, ताकि त्यस कुरालाई छाडि हामीविरुद्ध तिमी कुनै अर्कैकुरो गढ; तथा त्यस अवस्थामा भने तिनीहरूले तिमीलाई आफ्नो (विशष) मित्र बनाउने थिए ।

وَلَوْلَا أَنْ ثَبَّتْنَاكَ لَقَدْ كِدْتَ تَرْكَنُ إِلَيْهِمْ شَيْئًا قَلِيلًا ﴿٧٤﴾

७५. तथा यदि (पवित्र कुरानद्वारा) हामीले तिमीलाई दृढ नतुल्याएका भए, तिमी अवश्य केही हदसम्म तिनीहरूतर्फ झुक्नेथियौ ।

إِذًا لَأَذَقْنَاكَ ضِعْفَ الْحَيَاةِ وَضِعْفَ الْمَمَاتِ ثُمَّ لَا تَجِدُ لَكَ عَلَيْنَا نَصِيرًا ﴿٧٥﴾

७६. त्यस हालतमा हामी तिमीलाई जीवनको त्यस्तै (पीडा) तथा मृत्युको पनि त्यस्तै (पीडा) को स्वाद चखाउने थियौं, तब तिमीले स्वयम्का निम्ति हामीविरुद्ध कुनै सहयोगी पाउने थिएनौ ।

وَإِنْ كَادُوا لَيَسْتَفِزُّونَكَ مِنَ الْأَرْضِ لِيُخْرِجُوكَ مِنْهَا ۖ وَإِذًا لَا يَلْبَثُونَ خِلَافَكَ إِلَّا قَلِيلًا ﴿٧٦﴾

७७. तथा तिमीलाई देशबाट निवार्सित गर्न तिनीहरू निःसन्देह प्रयासरत छन् ताकि तिनीहरूले तिमीलाई त्यहाबाट निस्कासित गर्न सकून्; परन्तु त्यसो भएमा तिनीहरू (स्वयम्) पनि तिमीपछि त्यहाँ केवल केही समयसम्म मात्र रहन सक्नेछन्

سُنَّةَ مَنْ قَدْ اَرْسَلْنَا قَبْلَكَ مِنْ رُّسُلِنَا وَلَا تَجِدُ لِسُنَّتِنَا تَحْوِيْلًا ۝

७८. तिमीभन्दा पहिला हामीले पठाएका हाम्रा सन्देशवाहकहरूसित (हाम्रो यही नै) तरिका (रहँदै आएको छ) तथा हाम्रो यस तरिकामा तिमीले कुनै प्रकारको परिवर्तन पाउनेछैनौ ।

اَقِمِ الصَّلٰوةَ لِدُلُوْكِ الشَّمْسِ اِلٰى غَسَقِ الَّيْلِ وَقُرْاٰنَ الْفَجْرِ ؕ اِنَّ قُرْاٰنَ الْفَجْرِ كَانَ مَشْهُوْدًا ۝

७९. सूर्य ढल्कने र मन्द हुने समयदेखि लिएर रात्रि अन्धकारमय हुने समयसम्म नमाज अनुष्ठान गर्ने गर, तथा बिहानीपख (को प्रार्थनामा) कुरानको पाठ गर्ने गर । अवश्य नै, प्रभातकालमा (कुरानको) पाठ गर्ने कार्य (अल्लाहका जुनाफमा अति) स्वीकार्य रहेको छ ।

وَمِنَ الَّيْلِ فَتَهَجَّدْ بِهٖ نَافِلَةً لَّكَ ۖ عَسٰۤى اَنْ يَّبْعَثَكَ رَبُّكَ مَقَامًا مَّحْمُوْدًا ۝

८०. तथा रात्रि(को पछिल्लो पहर)मा त्यसका (कुरानका) निम्ति जागने गर, त्यो तिम्रा निम्ति अतिरिक्त प्रार्थनास्वरूप रहेको छ । सम्भव छ तिम्रा प्रतिपालक ले तिमीलाई (उठाएर) एउटा महिमामय स्थानसम्म पुऱ्याउन् ।

وَقُلْ رَّبِّ اَدْخِلْنِيْ مُدْخَلَ صِدْقٍ وَّاَخْرِجْنِيْ مُخْرَجَ صِدْقٍ وَّاجْعَلْ لِّيْ مِنْ لَّدُنْكَ سُلْطٰنًا نَّصِيْرًا ۝

८१. तथा तिमी भन, "हे मेरा प्रतिपालक , मेरो प्रवेशलाई एउटा प्रवेशस्वरूप तुल्याउ तथा त्यसपश्चात मेरो बाहिर प्रस्थानलाई एउटा प्रस्थान बनाउ । तथा आफ्ना जुनाफबाट मेरा निम्ति एउटा शक्तिशाली सहयोगी निर्धारण गर ।"

وَقُلْ جَآءَ الْحَقُّ وَزَهَقَ الْبَاطِلُ ؕ اِنَّ الْبَاطِلَ كَانَ زَهُوْقًا ۝

८२. तथा भन, "सत्यको आगमन भयो र असत्य अदृश्य हुनगयो । असत्य त निस्सन्देह -चाँडै) अदृश्य हुने वस्तु हो ।"

وَنُنَزِّلُ مِنَ الْقُرْاٰنِ مَا هُوَ شِفَآءٌ وَّرَحْمَةٌ لِّلْمُؤْمِنِيْنَ ۙ وَلَا يَزِيْدُ الظّٰلِمِيْنَ اِلَّا خَسَارًا ۝

८३. तथा हामी कुरानलाई (विस्तारै-विस्तारै) अवतीर्ण गरिरहेछौं जुन विश्वासीजनका निम्ति उपचार करुणास्वरूप रहेको छ; परन्तु अत्याचारीहरूलाई भने त्यसले केवल

घाटातर्फ नै अग्रसर गराउँछ ।

८४. तथा जब हामी मानिसमाथि अनुग्रह वर्षण गर्छौं, उ विमुख भएर एकतर्फ लाग्छ; तथा जब उसलाई आपत्तिले छुन्छ, उ निराश हुन पुग्छ ।

وَإِذَآ أَنْعَمْنَا عَلَى ٱلْإِنسَانِ أَعْرَضَ وَنَـَٔا بِجَانِبِهِۦ ۖ وَإِذَا مَسَّهُ ٱلشَّرُّ كَانَ يَـُٔوسًا ﴿٨٣﴾

८५. तिमी भन, "प्रत्येक व्यक्ति आफ्नो तरिकाअनुसार कार्यरत छ; तथा कुन व्यक्ति पूर्णतया सन्मार्गप्राप्त रहेको छ भन्ने कुरा तिम्रा प्रतिपालक ले अति राम्ररी जान्दछन् ।"

قُلْ كُلٌّ يَعْمَلُ عَلَىٰ شَاكِلَتِهِۦ فَرَبُّكُمْ أَعْلَمُ بِمَنْ هُوَ أَهْدَىٰ سَبِيلًا ﴿٨٤﴾

८६. तथा तिनीहरू तिमीसित (आत्मा)का सम्बन्धमा सोध्छन् । तिमी भन, "आत्मा मेरा प्रतिपालक को आदेशबाट (सृष्टि भएको) हो, तथा त्यसबारे तिमीहरूलाई अति कम ज्ञान प्रदान गरिएको छ ।

وَيَسْـَٔلُونَكَ عَنِ ٱلرُّوحِ ۖ قُلِ ٱلرُّوحُ مِنْ أَمْرِ رَبِّى وَمَآ أُوتِيتُم مِّنَ ٱلْعِلْمِ إِلَّا قَلِيلًا ﴿٨٥﴾

८७. तथा यदि हामीले चाहेमा जुन कुरा तिमीमाथि हामीले आकाशवाणी गरेका छौं त्यसलाई अवश्य लैजान सक्नेछौं त्यसपछि (त्यस सम्बन्धमा) तिमीले स्वयम्‌का निम्ति हामीविरुद्ध कोही संरक्षक पाउनेछैनौ ।

وَلَئِن شِئْنَا لَنَذْهَبَنَّ بِٱلَّذِىٓ أَوْحَيْنَآ إِلَيْكَ ثُمَّ لَا تَجِدُ لَكَ بِهِۦ عَلَيْنَا وَكِيلًا ﴿٨٦﴾

८८. केवल तिम्रा प्रतिपालक को कृपाबाहेक । निश्चय नै, तिमीमाथि उनको ठूलो करुणा रहेको छ ।

إِلَّا رَحْمَةً مِّن رَّبِّكَ ۚ إِنَّ فَضْلَهُۥ كَانَ عَلَيْكَ كَبِيرًا ﴿٨٧﴾

८९. तिमी भन, "यदि मानिस र जिन्न सबै एकत्रित भएर यस्तै कुरान बनाउन चाहेमा, तिनीहरूले त्यससदृश -कुरान) बनाउन सक्नेछैनन्, चाहे तिनीहरूले परस्पर एक अर्कालाई सहयोग नै किन नगरून् ।"

قُل لَّئِنِ ٱجْتَمَعَتِ ٱلْإِنسُ وَٱلْجِنُّ عَلَىٰٓ أَن يَأْتُوا۟ بِمِثْلِ هَـٰذَا ٱلْقُرْءَانِ لَا يَأْتُونَ بِمِثْلِهِۦ وَلَوْ كَانَ بَعْضُهُمْ لِبَعْضٍ ظَهِيرًا ﴿٨٨﴾

९०. तथा हामीले निश्चयपूर्वक यस कुरानमा मानवजातिका निम्ति

وَلَقَدْ صَرَّفْنَا لِلنَّاسِ فِى هَـٰذَا ٱلْقُرْءَانِ

مِنْ كُلِّ مَثَلٍ ز فَأَبَىٰ أَكْثَرُ النَّاسِ إِلَّا كُفُورًا ﴿٨٩﴾

सबैप्रकारका दृष्टान्तहरू विभिन्न तरिकाले वर्णन गरेका छौं, परन्तु अधिकतर मानिसहरूले अविश्वासबाहेक अन्य सबै कुरालाई अस्वीकार गर्छन् ।

وَقَالُوا لَنْ نُؤْمِنَ لَكَ حَتَّىٰ تَفْجُرَ لَنَا مِنَ الْأَرْضِ يَنْبُوعًا ﴿٩٠﴾

९१. तथा तिनीहरू भन्छन्, "जबसम्म तिमी हाम्रा निम्ति पृथ्वीबाट कुनै पानीको मूल फुटाउँदैनौ हामी तिमीलाई कदापि विश्वास गर्नेछैनौं,

أَوْ تَكُونَ لَكَ جَنَّةٌ مِنْ نَخِيلٍ وَعِنَبٍ فَتُفَجِّرَ الْأَنْهَارَ خِلَالَهَا تَفْجِيرًا ﴿٩١﴾

९२. अथवा तिम्रो खजूर र अङ्गुरको यस्तो बगैँचा रहोस् जसका बीचमा तिमीले प्रशस्त नहरहरू बगाएको होस्,

أَوْ تُسْقِطَ السَّمَاءَ كَمَا زَعَمْتَ عَلَيْنَا كِسَفًا أَوْ تَأْتِيَ بِاللَّهِ وَالْمَلَائِكَةِ قَبِيلًا ﴿٩٢﴾

९३. "अथवा तिमीले दावा गरेअनुसार आकाशलाई टुक्राटुक्रा पारेर हामीमाथि गिराउ वा अल्लाह र फरिस्ताहरुलाई हाम्रा आमुन्ने सामुन्ने ल्याएर खडा गर,"

أَوْ يَكُونَ لَكَ بَيْتٌ مِنْ زُخْرُفٍ أَوْ تَرْقَىٰ فِي السَّمَاءِ ۚ وَلَنْ نُؤْمِنَ لِرُقِيِّكَ حَتَّىٰ تُنَزِّلَ عَلَيْنَا كِتَابًا نَقْرَؤُهُ ۗ قُلْ سُبْحَانَ رَبِّي هَلْ كُنْتُ إِلَّا بَشَرًا رَسُولًا ﴿٩٣﴾

९४. "अथवा तिम्रो एउटा सुनको घर रहोस् वा तिमी आरोहण गरी आकाशसम्म पुग, तथा जबसम्म हामीले पढ्न सक्ने एउटा पुस्तक तिमी हामीसमक्ष अवतीर्ण गर्दैनौ तबसम्म तिम्रो आकाशारोहणप्रति हामी विश्वास गर्नेछैनौं ।" तिमी भन, "मेरा प्रतिपालक अति पवित्र छन् । म त सन्देशवाहक(स्वरूप पठाइएको) केवल एउटा मानिस हुँ ।

وَمَا مَنَعَ النَّاسَ أَنْ يُؤْمِنُوا إِذْ جَاءَهُمُ الْهُدَىٰ إِلَّا أَنْ قَالُوا أَبَعَثَ اللَّهُ بَشَرًا رَسُولًا ﴿٩٤﴾

९५. तथा मानिसहरूलाई तिनीहरूसमक्ष मार्गदर्शनको आगमनपश्चात् विश्वास गर्नबाट केवल कुन कुराले छेकेको छ भने, तिनीहरूको भनाइ थियो, "के अल्लाहले एउटा मानिसलाई सन्देशवाहक(स्वरूप) पठाएका छन्?"

قُلْ لَوْ كَانَ فِي الْأَرْضِ مَلَائِكَةٌ يَمْشُونَ مُطْمَئِنِّينَ لَنَزَّلْنَا عَلَيْهِمْ مِنَ السَّمَاءِ مَلَكًا رَسُولًا ﴿٩٥﴾

९६. तिमी भन, "शान्ति र मौनताका साथ पृथ्वीमा हिँड्ने देवदूतहरू यदि रहेका भए, हामी अवश्य आकाशबाट एउटा

देवदूतलाई सन्देशवाहक (स्वरूप) तिनीहरूसमक्ष अवतीर्ण गर्ने थियौं ।"

९७. तिमी भन, "म र तिमीहरूबीच साक्षीस्वरूप अल्लाह नै यथेष्ट रहेका छन्, निश्चय नै, उनी आफ्ना सेवकहरूलाई राम्ररी जान्दछन् तथा देख्छन् ।

قُلْ كَفٰى بِاللّٰهِ شَهِيْدًا بَيْنِيْ وَبَيْنَكُمْ ۚ اِنَّهٗ كَانَ بِعِبَادِهٖ خَبِيْرًا بَصِيْرًا ﴿٩٦﴾

९८. तथा (केवल) त्यही व्यक्ति सन्मार्गप्राप्त रहेको छ जसलाई अल्लाहले मार्ग देखाउँछन्, परन्तु ती व्यक्तिहरू जसलाई उनले नष्ट हुनलाई छाडी दिन्छन् तिनीहरूका निम्ति भने उनीबाहेक तिमीले कोही सहयो गीपाउने छैनौ । तथा पुनरुत्थानका दिन हामी तिनीहरूलाई अन्धा, लाटा र काना रहेका अवस्थामा तिनीहरूको शिर टेकाएर एकत्रित गर्नेछौं । तिनीहरूको निवासस्थान नर्क हुनेछ, जब जब त्यो निभ्न लाग्छ हामी तिनीहरूका निम्ति त्यसको ज्वालालाई बढाउनेछौं ।

وَمَنْ يَّهْدِ اللّٰهُ فَهُوَ الْمُهْتَدِ ۚ وَمَنْ يُّضْلِلْ فَلَنْ تَجِدَ لَهُمْ اَوْلِيَآءَ مِنْ دُوْنِهٖ ۚ وَنَحْشُرُهُمْ يَوْمَ الْقِيٰمَةِ عَلٰى وُجُوْهِهِمْ عُمْيًا وَّبُكْمًا وَّصُمًّا ۚ مَاْوٰىهُمْ جَهَنَّمُ ۚ كُلَّمَا خَبَتْ زِدْنٰهُمْ سَعِيْرًا ﴿٩٧﴾

९९. त्यो नै तिनीहरूको प्रतिदान हो, कारण तिनीहरूले हाम्रा चिह्नहरूलाई अस्वीकार गरेका थिए तथा भनेका थिए, "के! जब हामी हड्डी र हाडका टुक्राटुक्री हुन पुग्नेछौं, तब के हामीलाई एउटा नयाँ सृष्टिस्वरूप उठाइने छ त?"

ذٰلِكَ جَزَآؤُهُمْ بِاَنَّهُمْ كَفَرُوْا بِاٰيٰتِنَا وَقَالُوْٓا ءَاِذَا كُنَّا عِظَامًا وَّرُفَاتًا ءَاِنَّا لَمَبْعُوْثُوْنَ خَلْقًا جَدِيْدًا ﴿٩٨﴾

१००. जसले आकाशमण्डल र पृथ्वीको सिर्जना गरे उनै अल्लाहमा तिनीहरूसदृश सिर्जना गर्ने सामर्थ्य रहेको छ भनी तिनीहरूले देखेका छैनन् र? तथा उनले तिनीहरूका निम्ति एउटा म्याद निर्धारित गरेका छन् भन्ने कुरामा केही सन्देह रहेको छैन । परन्तु अत्याचारी व्यक्तिहरूले अविश्वासबाहेक अन्य सबै कुराहरूलाई अस्वीकार गरे ।

اَوَلَمْ يَرَوْا اَنَّ اللّٰهَ الَّذِيْ خَلَقَ السَّمٰوٰتِ وَالْاَرْضَ قَادِرٌ عَلٰٓى اَنْ يَّخْلُقَ مِثْلَهُمْ وَجَعَلَ لَهُمْ اَجَلًا لَّا رَيْبَ فِيْهِ ۚ فَاَبَى الظّٰلِمُوْنَ اِلَّا كُفُوْرًا ﴿٩٩﴾

१०१. तिमी भन, "तिमीहरू मेरा प्रतिपालक को करुणाको खजानाका स्वामी रहन्थ्यौ भने पनि खर्च हुने डरले त्यसलाई रोकेर राख्ने थियौ, किनभने मानिस(को जात)कृपण हुन्छ ।

قُلْ لَّوْ اَنْتُمْ تَمْلِكُوْنَ خَزَآئِنَ رَحْمَةِ رَبِّيْٓ اِذًا لَّاَمْسَكْتُمْ خَشْيَةَ الْاِنْفَاقِ ۭ وَكَانَ الْاِنْسَانُ قَتُوْرًا ۝١٠٠

१०२. तथा सत्य के हो भने हामीले मूसालाई नौवटा स्पष्ट चिह्नहरू प्रदान गरेका थियौं । अत: तिमी इजरायलका सन्तानलाई सोध, जब उनी तिनीहरूसमक्ष आए, फिरौनले उनलाई भन्यो, "ए मूसा म त तिमीलाई एकजना धोकाग्रस्त व्यक्ति ठान्दछु ।"

وَلَقَدْ اٰتَيْنَا مُوْسٰى تِسْعَ اٰيٰتٍۢ بَيِّنٰتٍ فَسْــَٔلْ بَنِيْٓ اِسْرَاۗءِيْلَ اِذْ جَاۗءَهُمْ فَقَالَ لَهٗ فِرْعَوْنُ اِنِّىْ لَاَظُنُّكَ يٰمُوْسٰى مَسْحُوْرًا ۝١٠١

१०३. उनले भने, "यी -चिह्नहरू अनेकौं) साक्षीहरूस्वरूप आकाशमण्डल र पृथ्वीका स्वामीले नै अवतीर्ण गरेका हुन् भनी तिमी राम्ररी जान्दछौं, तथा ए फिरौन, तिमी विनाश भएका (व्यक्ति) हौ भनी म निश्चयपूर्वक ठान्छु ।"

قَالَ لَقَدْ عَلِمْتَ مَآ اَنْزَلَ هٰٓؤُلَاۗءِ اِلَّا رَبُّ السَّمٰوٰتِ وَالْاَرْضِ بَصَاۗىِٕرَ ۚ وَاِنِّىْ لَاَظُنُّكَ يٰفِرْعَوْنُ مَثْبُوْرًا ۝١٠٢

१०४. अत: उसले तिनीहरूलाई देशबाट निष्कासित गर्ने निश्चिय गऱ्यो; परन्तु हामीले उसलाई र उससित रहेका मानिसहरू सबैलाई डुबायौं ।

فَاَرَادَ اَنْ يَّسْتَفِزَّهُمْ مِّنَ الْاَرْضِ فَاَغْرَقْنٰهُ وَمَنْ مَّعَهٗ جَمِيْعًا ۝١٠٣

१०५. तथा त्यस (फिरौन) पछि हामीले इजरायलका सन्तानलाई भन्यौं, "तिमीहरू त्यस देशमा बास गर; तथा जब पछिका दिनहरूसम्बन्धी अङ्गीकार (गरिएको निर्धारित समय) आउनेछ, तिमीहरू सबैलाई हामी पुन: एकपटक एकत्रित गरेर ल्याउनेछौं ।"

وَّقُلْنَا مِنْۢ بَعْدِهٖ لِبَنِيْٓ اِسْرَاۗءِيْلَ اسْكُنُوا الْاَرْضَ فَاِذَا جَاۗءَ وَعْدُ الْاٰخِرَةِ جِئْنَا بِكُمْ لَفِيْفًا ۝١٠٤

१०६. तथा हामीले यसलाई सत्यमा आधारित अवतीर्ण गरेका छौं र यो सत्यकासाथ अवतीर्ण भएको छ । तथा हामीले तिमीलाई केवल एकजना सशुभसन्देशवाहक र सचेतकस्वरूप

وَبِالْحَقِّ اَنْزَلْنٰهُ وَبِالْحَقِّ نَزَلَ ۭ وَمَآ اَرْسَلْنٰكَ اِلَّا مُبَشِّرًا وَّنَذِيْرًا ۝١٠٥

पठाएका हौं ।

१०७. तथा हामीले कुरानलाई खण्डखण्डमा विभाजित गरेका छौं ताकि त्यसलाई तिमी मानवजातिसमक्ष अन्तरालकासाथ पाठ गर्न सक तथा हामीले त्यसलाई अलिअलि गरी अवतीर्ण गरेका छौं ।

وَقُرْاٰنًا فَرَقْنٰهُ لِتَقْرَاَهٗ عَلَى النَّاسِ عَلٰى مُكْثٍ وَّنَزَّلْنٰهُ تَنْزِيْلًا ۝١٠٦

१०८. तिमी भन, "चाहे तिमीहरू त्यसप्रति विश्वास गर अथवा विश्वास नगर, यसअघि जुन व्यक्तिहरूलाई ज्ञान प्रदान गरिएको छ, तिनीहरूसमक्ष जब यसको पाठ गरिन्छ तिनीहरू भने आज्ञाकारी बनी घोप्टो परेर दण्डवत गर्न पुग्छन्,"

قُلْ اٰمِنُوْا بِهٖٓ اَوْ لَا تُؤْمِنُوْا ۗ اِنَّ الَّذِيْنَ اُوْتُوا الْعِلْمَ مِنْ قَبْلِهٖٓ اِذَا يُتْلٰى عَلَيْهِمْ يَخِرُّوْنَ لِلْاَذْقَانِ سُجَّدًا ۝١٠٧

१०९. "तथा तिनीहरू भन्छन्, "हाम्रा प्रतिपालक पवित्र छन् । निश्चय नै, हाम्रा प्रतिपालक को वचन अनिवार्यरूपमा पूर्ण भएरै छाड्छ ।"

وَّيَقُوْلُوْنَ سُبْحٰنَ رَبِّنَآ اِنْ كَانَ وَعْدُ رَبِّنَا لَمَفْعُوْلًا ۝١٠٨

११०. तिनीहरू रुदै घोप्टो परेर दण्डवत गर्ने गर्छन्, तथा त्यसले तिनीहरूमा नम्रता बढाउँछ ।

وَيَخِرُّوْنَ لِلْاَذْقَانِ يَبْكُوْنَ وَيَزِيْدُهُمْ خُشُوْعًا ۩ ۝١٠٩

१११. तिमी भन, "चाहे तिमीहरू अल्लाह भनी पुकार अथवा रहमान; जुन नामले तिमीहरू (उनलाई) पुकाछौं, सम्पूर्ण सर्वोत्तम नामहरू उनकै रहेका छन् ।" तथा आफ्नो नमाज अति उच्च स्वरमा नपढ, न ता (अति) निम्न स्वरमा नै,

قُلِ ادْعُوا اللّٰهَ اَوِ ادْعُوا الرَّحْمٰنَ ۗ اَيًّا مَّا تَدْعُوْا فَلَهُ الْاَسْمَآءُ الْحُسْنٰى ۚ وَلَا تَجْهَرْ بِصَلَاتِكَ وَلَا تُخَافِتْ بِهَا وَابْتَغِ بَيْنَ ذٰلِكَ سَبِيْلًا ۝١١٠

अपितु मध्यमार्ग अवलम्वन गर्ने गर ।

११२. तथा तिमी भन, "सम्पूर्ण प्रशंसाका स्वामी अल्लाह नै रहेका छन्, जसले आफ्ना निम्ति न कुनै पुत्र ग्रहण गरेका छन्, न उनको साम्राज्यमा कोही भागीदार रहेको छ, न ता उनको दुर्बलताका कारण कोही उनको सहयोगी बन्न सक्छ ।" तथा जोडतोडका साथ उनको महिमाको गुणगान गर ।

وَقُلِ الْحَمْدُ لِلَّهِ الَّذِي لَمْ يَتَّخِذْ وَلَدًا وَلَمْ يَكُن لَّهُ شَرِيكٌ فِي الْمُلْكِ وَلَمْ يَكُن لَّهُ وَلِيٌّ مِّنَ الذُّلِّ وَكَبِّرْهُ تَكْبِيرًا ﴿١١١﴾




## अल्-काह्फ
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

اَلْحَمْدُ لِلّٰهِ الَّذِيْٓ اَنْزَلَ عَلٰى عَبْدِهِ الْكِتٰبَ وَلَمْ يَجْعَلْ لَّهٗ عِوَجًا ②

२. सम्पूर्ण प्रशंसाका स्वामी तिनै अल्लाह रहेका छन् जसले आफ्ना भृत्यप्रति (यो) पुस्तक अवतीर्ण गरेका छन् तथा उनले उनमा* र त्यसमा कुनै प्रकारको कुटिलता राखेका छैनन् ।

قَيِّمًا لِّيُنْذِرَ بَاْسًا شَدِيْدًا مِّنْ لَّدُنْهُ وَيُبَشِّرَ الْمُؤْمِنِيْنَ الَّذِيْنَ يَعْمَلُوْنَ الصّٰلِحٰتِ اَنَّ لَهُمْ اَجْرًا حَسَنًا ③

३. (उनले यसलाई) एउटा संरक्षक (बनाएका छन्), ताकि यसले उनका तर्फबाट आउने एउटा कठोर दण्डप्रति सतर्क तुल्याओस्, तथा पुण्यकर्म गर्ने विश्वासीजनलाई तिनीहरूले उत्तम प्रतिदान प्राप्त गर्नेछन् भनी शुभसन्देशहरू प्रदान गरोस् ।

مّٰكِثِيْنَ فِيْهِ اَبَدًا ④

४. जहाँ तिनीहरू सदा रहनेछन्;

وَّيُنْذِرَ الَّذِيْنَ قَالُوا اتَّخَذَ اللّٰهُ وَلَدًا ⑤

५. तथा त्यसले ती व्यक्तिहरूलाई चेतावनी देओस्, जसले भन्छन्, "अल्लाहले स्वयम्का निम्ति एउटा पुत्रधारण गरेका

---

* टिप्पणी: "लहू" ( لَهٗ ) शब्दमा प्रयोग भएको हू (ﻩ) सर्वनामको प्रयोग अल्लाहका भृत्य (पुस्तक ग्रहिता) तथा स्वयम् पुस्तक दुबैमा समरूपमा प्रयोग हुन्छ । यता दुबैमा एकसाथ प्रयोग हुन सक्ने एउटै सर्वनाम राखी अंग्रेजीमा अनुवाद गर्न सम्भव हुदैन । यदि सबैले यसको अनुवाद "अल्लाहले त्यसमा कुनै कुटिलता राखेका छैनन्" भनी गरेमा पवित्र नबी (उनीप्रति शन्ति होस्) त्यस शुद्धताको वचनबाट वञ्चित हुन्छन् । यदि कसैले यसको अनुवाद "उनले उनमा कुनै कुटिलता राखेका छैनन्" भनी गरेमा, उक्त पुस्तक त्यस शुद्धताबाट बाहिर हुन्छ । यसै समस्यालाई समाधान गर्नका निम्ति अक्षरमाथि अधिक जोड दिनुको सट्टा मूलभूत उद्देश्यलाई ध्यानमा राखी हामीले उक्त आयतको अनुवाद एउटा अर्कै शैलीमा गरेका छौं ।

छन्"

مَا لَهُمْ بِهٖ مِنْ عِلْمٍ وَّلَا لِاٰبَآئِهِمْ ؕ كَبُرَتْ كَلِمَةً تَخْرُجُ مِنْ اَفْوَاهِهِمْ ؕ اِنْ يَّقُوْلُوْنَ اِلَّا كَذِبًا ۝٥

६. न तिनीहरूलाई त्यसबारे कुनै ज्ञान प्राप्त छ, न त तिनीहरूका पितृहरूलाई नै (प्राप्त थियो) । तिनीहरूका मुखबाट जुन शब्द निस्किरहेछ त्यो अति ठूलो रहेको छ । तिनीहरू मिथ्याबाहेक केही बोलिरहेका छैनन् ।

فَلَعَلَّكَ بَاخِعٌ نَّفْسَكَ عَلٰٓى اٰثَارِهِمْ اِنْ لَّمْ يُؤْمِنُوْا بِهٰذَا الْحَدِيْثِ اَسَفًا ۝٦

७. अतः यदि तिनीहरूले यस उत्तम प्रवचनप्रति विश्वास गरेनन् भने सम्भवतः तिनीहरूको शोकमा दुखित भइ तिमी आफ्नो ज्यान गुमाउने छौ ।

اِنَّا جَعَلْنَا مَا عَلَى الْاَرْضِ زِيْنَةً لَّهَا لِنَبْلُوَهُمْ اَيُّهُمْ اَحْسَنُ عَمَلًا ۝٧

८. वस्तुत, पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरूलाई हामीले त्यसका निम्ति सौन्दर्यसाधन स्वरूप बनाएका छौं, ताकि त्यसद्वारा हामी तिनीहरूमध्ये सबैभन्दा उत्तम कार्य गर्ने व्यक्ति को हो भनी जाँच्न सकौं ।

وَاِنَّا لَجٰعِلُوْنَ مَا عَلَيْهَا صَعِيْدًا جُرُزًا ۝٨

९. तथा हामी त्यहाँ रहेका सबै वस्तुहरूलाई उजाड भूमिमा परिणत गर्नेछौं

اَمْ حَسِبْتَ اَنَّ اَصْحٰبَ الْكَهْفِ وَالرَّقِيْمِ ۙ كَانُوْا مِنْ اٰيٰتِنَا عَجَبًا ۝٩

१०. के गुफा र शिलालेख (सित सम्बन्धित) व्यक्तिहरू हाम्रा चिह्नहरूमध्ये आश्चर्यजनक चिह्न थिए भनी तिमी ठान्छौ?

اِذْ اَوَى الْفِتْيَةُ اِلَى الْكَهْفِ فَقَالُوْا رَبَّنَآ اٰتِنَا مِنْ لَّدُنْكَ رَحْمَةً وَّهَيِّئْ لَنَا مِنْ اَمْرِنَا رَشَدًا ۝١٠

११. जब ती नवयुवकहरू गुफामा आश्रय लिन पुगे र तिनीहरूले भने, "हे हाम्रा प्रतिपालक , आफ्ना जुनाफबाट हामीलाई करुणादान गर, तथा हाम्रो मामिलामा हामीलाई उचित मार्ग प्रदर्शन गर ।"

فَضَرَبْنَا عَلٰٓى اٰذَانِهِمْ فِى الْكَهْفِ سِنِيْنَ عَدَدًا ۝١١

१२. अतः केही वर्षसम्म लागि हामीले (बाह्यिक संसारको खबर सुन्नबाट)

तिनीहरूलाई वञ्चित राख्यौं ।

ثُمَّ بَعَثْنٰهُمْ لِنَعْلَمَ اَيُّ الْحِزْبَيْنِ اَحْصٰى لِمَا لَبِثُوْٓا اَمَدًا ﴿١٣﴾

१३. त्यसपछि हामीले तिनीहरूलाई उत्थान गऱ्यौं ताकि ती दुई समूहमध्ये तिनीहरूले त्यहाँ बिताएको अवधिको कसले यथार्थत गणना राखेको छ भन्ने कुरालाई हामी जान्न सकौं ।

نَحْنُ نَقُصُّ عَلَيْكَ نَبَاَهُمْ بِالْحَقِّ ۭ اِنَّهُمْ فِتْيَةٌ اٰمَنُوْا بِرَبِّهِمْ وَزِدْنٰهُمْ هُدًى ﴿١٤﴾

१४. हामी तिमीसमक्ष तिनीहरूको घटना सत्यका साथ वर्णन गर्नेछौं; तिनीहरू केही यस्ता नवयुवकहरू थिए जो आफ्ना प्रतिपालक प्रति विश्वास गर्थे तथा तिनीहरूलाई हामीले मार्गदर्शनमा बृद्धि प्रदान गरेका थियौं ।

وَّرَبَطْنَا عَلٰي قُلُوْبِهِمْ اِذْ قَامُوْا فَقَالُوْا رَبُّنَا رَبُّ السَّمٰوٰتِ وَالْاَرْضِ لَنْ نَّدْعُوَا۟ مِنْ دُوْنِهٖٓ اِلٰـهًا لَّقَدْ قُلْنَآ اِذًا شَطَطًا ﴿١٥﴾

१५. तथा हामीले तिनीहरूको हृदयलाई दृढ तुल्यायौं जब तिनीहरूले खडा भएर भने, "हाम्रा प्रतिपालक आकाशमण्डल र पृथ्वीका प्रतिपालक हुन् । उनीबाहेक अन्य कुनै उपास्यलाई हामी कदापि पुकार्ने छैनौं; (यदि हामीले गऱ्यौं भने) निस्सन्देह हामीले न्याय भन्दा बाहिरको कुरो गर्ने थियौं

هٰٓؤُلَاۗءِ قَوْمُنَا اتَّخَذُوْا مِنْ دُوْنِهٖٓ اٰلِهَةً ۭ لَوْلَا يَاْتُوْنَ عَلَيْهِمْ بِسُلْطٰنٍۢ بَيِّنٍ ۭ فَمَنْ اَظْلَمُ مِمَّنِ افْتَرٰى عَلَي اللّٰهِ كَذِبًا ﴿١٦﴾

१६. "यी हाम्रा मानिसहरूले उनलाई छाडी (अन्यान्य) उपास्यहरूलाई (उपसनाका निम्ति) चुनेका छन् । त्यसो भए तिनीहरू किन उनीहरूबारे कुनै स्पष्ट प्रमाण प्रस्तुत गर्दैनन् त? तथा जसले अल्लाहका सम्बन्धमा मिथ्या गढ्छ त्यो व्यक्ति भन्दा अधिक अत्याचारी अन्य को हुनसक्छ र?

وَاِذِ اعْتَزَلْتُمُوْهُمْ وَمَا يَعْبُدُوْنَ اِلَّا اللّٰهَ فَاْوٗٓا اِلَى الْكَهْفِ يَنْشُرْ لَكُمْ رَبُّكُمْ مِّنْ رَّحْمَتِهٖ وَيُهَيِّئْ لَكُمْ مِّنْ اَمْرِكُمْ مِّرْفَقًا ﴿١٧﴾

१७. "तथा (अब) जब तिमीहरूले तिनीहरूलाई र अल्लाहलाई छाडी जसको तिनीहरू उपासना गर्छन् त्यागिसकेका छौ भने, तिमीहरू गुफामा आश्रय लेओ; तिमीहरूका प्रतिपालक ले तिमीहरूका निम्ति आफ्नो करुणा खोल्नेछन् तथा उनले

तिमीहरूको (यस) मामिलामा अवश्य कुनै सुविधाजनक मार्ग तिमीहरूका निम्ति उपलब्ध गराउने छन् ।

وَتَرَى الشَّمْسَ إِذَا طَلَعَتْ تَّزَاوَرُ عَنْ كَهْفِهِمْ ذَاتَ الْيَمِينِ وَإِذَا غَرَبَتْ تَّقْرِضُهُمْ ذَاتَ الشِّمَالِ وَهُمْ فِي فَجْوَةٍ مِّنْهُ ۚ ذَٰلِكَ مِنْ آيَاتِ اللَّهِ ۗ مَن يَهْدِ اللَّهُ فَهُوَ الْمُهْتَدِ ۖ وَمَن يُضْلِلْ فَلَن تَجِدَ لَهُ وَلِيًّا مُّرْشِدًا ﴿١٨﴾

१८. तथा सूर्यलाई तिमीले त्यसको उदयावस्थामा तिनीहरूको गुफाको दाहिनेतर्फबाट टाढिँदै गरेको देख्न सक्छौ, तथा जब त्यो अस्ताउँछ, तिनीहरूबाट हट्दै बायाँतर्फ ढल्किँदै जान्छ; तथा तिनीहरू त्यस (गुफा) को एउटा फराकिलो ठाउँमा थिए । त्यो अल्लाहका चिह्नहरूमध्ये एउटा चिह्न रहेको छ । जसलाई अल्लाहले मार्गप्रदर्शन गर्छन् त्यही व्यक्ति सन्मार्गप्राप्त रहेको छ; परन्तु जसलाई उनले पथभ्रष्ट घोषित गर्छन्, त्यसका निम्ति तिमीले न कोही सहयोगी पउने छौ न त कोही मार्गदर्शक नै ।

وَتَحْسَبُهُمْ أَيْقَاظًا وَهُمْ رُقُودٌ ۚ وَنُقَلِّبُهُمْ ذَاتَ الْيَمِينِ وَذَاتَ الشِّمَالِ ۖ وَكَلْبُهُم بَاسِطٌ ذِرَاعَيْهِ بِالْوَصِيدِ ۚ لَوِ اطَّلَعْتَ عَلَيْهِمْ لَوَلَّيْتَ مِنْهُمْ فِرَارًا وَلَمُلِئْتَ مِنْهُمْ رُعْبًا ﴿١٩﴾

१९. तिनीहरूलाई तिमी जागृत ठान्छौ वस्तुतः तिनीहरू निद्रित हुन्छन्, तथा तिनीहरूलाई हामी दायाँतर्फ र वायाँतर्फ घुमाउने छौं, तिनीहरूको कुकुर आफ्ना अघिल्ला दुबै खुट्टाहरू फैलाएर दलानमा बसिरहने छ । यदि तिमीले तिनीहरूको अवस्था देखेका भए, तिमी अवश्य भयभीत भई तिनीहरूबाट मुख फर्काएर भाग्ने थियौ, तथा तिनीहरूका डरले अवश्य तिम्रो (मन) भरिने थियो ।

وَكَذَٰلِكَ بَعَثْنَاهُمْ لِيَتَسَاءَلُوا بَيْنَهُمْ ۚ قَالَ قَائِلٌ مِّنْهُمْ كَمْ لَبِثْتُمْ ۖ قَالُوا لَبِثْنَا يَوْمًا أَوْ بَعْضَ يَوْمٍ ۚ قَالُوا رَبُّكُمْ أَعْلَمُ بِمَا لَبِثْتُمْ فَابْعَثُوا أَحَدَكُم بِوَرِقِكُمْ هَٰذِهِ إِلَى الْمَدِينَةِ فَلْيَنظُرْ أَيُّهَا أَزْكَىٰ طَعَامًا فَلْيَأْتِكُم بِرِزْقٍ مِّنْهُ وَلْيَتَلَطَّفْ وَلَا يُشْعِرَنَّ بِكُمْ أَحَدًا ﴿٢٠﴾

२०. तथा यसै प्रकार हामीले तिनीहरूले परस्पर एक अर्कालाई प्रश्न गरून् भनी तिनीहरूको उत्थान गऱ्यौं । तिनीहरूमध्ये एउटाले भन्यो, "तिमीहरू त्यहाँ कति दिनसम्म रह्यौ?" तिनीहरूले भने, "हामी त्यहाँ एक दिन अथवा दिनको केही अंशसम्म रह्यौ ।" (अन्य व्यक्तिहरूले) भने, "तिमीहरूले बिताएको (समयलाई) तिमीहरूका प्रतिपालक ले नै राम्ररी

जान्दछन् । अब तिमीहरूसित रहेका चाँदीका मुद्रा दिएर तिमीहरूमध्ये एकजनालाई नगरतर्फ पठाऊ; तथा त्यसले त्यहाँ (रहने व्यक्तिहरूमध्ये) को सित उत्तम खाद्य रहेको छ त्यस कुरालाई जाँचोस् र त्यसबाट केही खाद्यान्न तिमीहरूका निम्ति ल्याओस् । तथा उसले त्यहाँ नम्रतापूर्ण व्यवहार गरोस् तथा तिमीहरूका सम्बन्धमा कसैलाई अवगत नगराओस् ।"

إِنَّهُمْ إِن يَظْهَرُوا عَلَيْكُمْ يَرْجُمُوكُمْ أَوْ يُعِيدُوكُمْ فِي مِلَّتِهِمْ وَلَن تُفْلِحُوا إِذًا أَبَدًا ﴿٢٠﴾

२१. किनभने, यदि तिनीहरूले तिमीहरूलाई पराजय गरे भने, तिनीहरूले तिमीहरूमाथि ढुङ्गा बर्साउने छन् अथवा तिमीहरूलाई आफ्नो धर्मतर्फ फर्किन बाध्य गर्नेछन् र त्यसपछि तिमीहरू कदापि कृतार्थ हुन सक्नेछैनौ ।"

وَكَذَٰلِكَ أَعْثَرْنَا عَلَيْهِمْ لِيَعْلَمُوا أَنَّ وَعْدَ اللَّهِ حَقٌّ وَأَنَّ السَّاعَةَ لَا رَيْبَ فِيهَا إِذْ يَتَنَازَعُونَ بَيْنَهُمْ أَمْرَهُمْ فَقَالُوا ابْنُوا عَلَيْهِم بُنْيَانًا رَّبُّهُمْ أَعْلَمُ بِهِمْ قَالَ الَّذِينَ غَلَبُوا عَلَىٰ أَمْرِهِمْ لَنَتَّخِذَنَّ عَلَيْهِم مَّسْجِدًا ﴿٢١﴾

२२. तथा यसै प्रकार (मानिसहरूसमक्ष) हामीले तिनीहरूको भेद खोल्यौं ताकि अल्लाहको वचन सत्य रहेको थियो भन्ने कुरा तिनीहरूले जानून, तथा प्रतिश्रुत समयको आगमनबारे कुनै प्रकारको सन्देह थिएन भनी जानून (तथा त्यस समयको स्मरण गर) जब तिनीहरूका सम्बन्धमा मानिसहरू परस्पर विवाद गरिरहेका थिए, तथा (केहिले) भने, "तिनीहरूमाथि (रहेको स्थानमा)* एउटा भवन निर्माण गर ।" तिनीहरूका प्रतिपालक ले तिनीहरूलाई सबैभन्दा राम्ररी जान्दथे । जुन व्यक्तिहरू आफ्नो तर्कमा विजयी भए तिनीहरूले भने, "हामी निश्चय नै तिनीहरू (रहेको स्थान)माथि एउटा मस्जिदको निर्माण गर्ने छौं ।

---

* टिप्पणी: "तिनीहरूका माथिल्तिर एउटा भवन निर्माण गर" भन्नुको तात्पर्य के हो भने तिनीहरूको गुफा क्षेत्रमा एउटा स्मारक निर्माण गर ।

सَيَقُولُونَ ثَلَاثَةٌ رَّابِعُهُمْ كَلْبُهُمْ ۚ وَيَقُولُونَ خَمْسَةٌ سَادِسُهُمْ كَلْبُهُمْ رَجْمًا بِالْغَيْبِ ۚ وَيَقُولُونَ سَبْعَةٌ وَثَامِنُهُمْ كَلْبُهُمْ ۚ قُل رَّبِّي أَعْلَمُ بِعِدَّتِهِم مَّا يَعْلَمُهُمْ إِلَّا قَلِيلٌ ۗ فَلَا تُمَارِ فِيهِمْ إِلَّا مِرَاءً ظَاهِرًا وَلَا تَسْتَفْتِ فِيهِم مِّنْهُمْ أَحَدًا ﴿٢٢﴾

२३. अदृश्य कुराहरूबारे हठात् अट्कल लगाउँदै (केही व्यक्तिहरू) भन्छन्, "तिनीहरू तीनजना थिए, चौथो (चाहिँ) तिनीहरूको कुकुर थियो," तथा (अन्य केही व्यक्तिहरू) भन्छन्, "तिनीहरू पाँचजना थिए, तथा छैटौं तिनीहरूको कुकुर थियो ।" तथा (अझ अन्य केही व्यक्तिहरू) भन्छन्, "तिनीहरू सातजना थिए, आठौं तिनीहरूको कुकुर थियो ।" तिमी भन, "तिनीहरूको वास्तविक सङ्ख्या कति थियो भन्ने कुरा मेरा प्रतिपालक ले सर्वाधिक जान्दछन् । अति कम व्यक्तिहरूले मात्र तिनीहरूबारे जान्दछन् ।" अतः सामयिक चर्चा गर्नुबाहेक तिनीहरूबारे कुनै प्रकारको तर्क नगर, न ता तिनीहरूमध्ये कसैबाट तिनीहरूबारे जानकारी लिने चेष्टा नै गर ।

وَلَا تَقُولَنَّ لِشَيْءٍ إِنِّي فَاعِلٌ ذَٰلِكَ غَدًا ﴿٢٣﴾

२४. तथा कुनै कार्यबारे "त्यस कार्यलाई म अवश्य भोलि गर्नेछु" भनी नभन ।

إِلَّا أَن يَشَاءَ اللَّهُ ۚ وَاذْكُر رَّبَّكَ إِذَا نَسِيتَ وَقُلْ عَسَىٰ أَن يَهْدِيَنِ رَبِّي لِأَقْرَبَ مِنْ هَٰذَا رَشَدًا ﴿٢٤﴾

२५. परन्तु अल्लाहको जे इच्छा हुनेछ त्यही । तथा जब तिमी बिर्सन्छौ आफ्ना प्रतिपालक लाई स्मरण गर, तथा भन, सन्मार्ग प्राप्तिका निम्ति यो भन्दा पनि निकटस्थ मार्गतर्फ मेरा प्रतिपालक ले मेरो मार्गदर्शन गर्लान् भनी म आशा राख्छु ।

وَلَبِثُوا فِي كَهْفِهِمْ ثَلَاثَ مِائَةٍ سِنِينَ وَازْدَادُوا تِسْعًا ﴿٢٥﴾

२६. तथा तिनीहरू आफ्ना गुफामा तीनसय वर्षसम्म बसे, र त्यसमा नौ (वर्ष) अधिक वृद्धि गरे ।

قُلِ اللَّهُ أَعْلَمُ بِمَا لَبِثُوا ۖ لَهُ غَيْبُ السَّمَاوَاتِ وَالْأَرْضِ ۖ أَبْصِرْ بِهِ وَأَسْمِعْ ۚ مَا لَهُم مِّن دُونِهِ مِن وَلِيٍّ وَلَا يُشْرِكُ فِي حُكْمِهِ أَحَدًا ﴿٢٦﴾

२७. तिमी भन, "कति दिनहरूसम्म तिनीहरू त्यहाँ रहेका थिए भन्ने कुरा अल्लाहले सर्वाधिक जान्दछन् । आकाशमण्डल र पृथ्वीका अदृश्य कुराहरूका स्वामी उनी नै हुन् । उनको दृष्टिशक्ति कति नै (प्रखर) रहेको छ तथा श्रवणशक्ति पनि ! उनीबाहेक तिनीहरूको अन्य कोही मित्र छैन, तथा उनी आफ्नो

शासनाधिकारमा कसैलाई सहभागी हुन दिंदैनन् ।

وَاتْلُ مَآ اُوْحِيَ اِلَيْكَ مِنْ كِتٰبِ رَبِّكَ ۚ لَا مُبَدِّلَ لِكَلِمٰتِهٖ ۚ وَلَنْ تَجِدَ مِنْ دُوْنِهٖ مُلْتَحَدًا ﴿٢٨﴾

२८. तथा तिम्रा प्रतिपालक को पुस्तकबाट जुनकुरा तिमीमाथि आकाशवाणी गरिएको छ त्यसको पाठ गर । उनका शब्दहरूलाई हेरफेर गर्नसक्ने कोही छैन, तथा उनलाई छाडी तिमीले कदापि कुनै आश्रयस्थल पाउनेछैनौ ।

وَاصْبِرْ نَفْسَكَ مَعَ الَّذِيْنَ يَدْعُوْنَ رَبَّهُمْ بِالْغَدٰوةِ وَالْعَشِيِّ يُرِيْدُوْنَ وَجْهَهٗ وَلَا تَعْدُ عَيْنٰكَ عَنْهُمْ ۚ تُرِيْدُ زِيْنَةَ الْحَيٰوةِ الدُّنْيَا ۚ وَلَا تُطِعْ مَنْ اَغْفَلْنَا قَلْبَهٗ عَنْ ذِكْرِنَا وَاتَّبَعَ هَوٰىهُ وَكَانَ اَمْرُهٗ فُرُطًا ﴿٢٩﴾

२९. तथा जुन व्यक्तिहरू आफ्ना प्रतिपालक लाई उनको प्रसन्नता प्राप्तिको चाहनाका साथ बिहानी र बेलुकी पुकार्ने गर्छन्, तिनीहरूसित तिमी (पनि) धैर्य धारण गर ; तथा यस सांसारिक जीवनको शोभाप्राप्तिको आकाङ्क्षामा तिम्रा नेत्रहरू तिनीहरूलाई छाडी अघि नबढून्; तथा जसको हृदयलाई हामीले हाम्रो स्मरण (गर्न) बाट विस्मृत तुल्याएका छौं तथा जसले आफ्ना कुअभिलाषाहरूको अनुसरण गर्छ, तथा जसको मामिला सबै सीमाहरूभन्दा बाहिर पुगिसकेको छ, त्यस व्यक्तिको तिमी अनुसरण नगर ।

وَقُلِ الْحَقُّ مِنْ رَّبِّكُمْ ۗ فَمَنْ شَآءَ فَلْيُؤْمِنْ وَّمَنْ شَآءَ فَلْيَكْفُرْ ۙ اِنَّآ اَعْتَدْنَا لِلظّٰلِمِيْنَ نَارًا ۙ اَحَاطَ بِهِمْ سُرَادِقُهَا ۗ وَاِنْ يَّسْتَغِيْثُوْا يُغَاثُوْا بِمَآءٍ كَالْمُهْلِ يَشْوِي الْوُجُوْهَ ۗ بِئْسَ الشَّرَابُ ۗ وَسَآءَتْ مُرْتَفَقًا ﴿٣٠﴾

३०. तथा तिमी भन, "(यो) तिमीहरूका प्रतिपालक का तर्फबाट सत्य (रहेको छ) । त्यसकारण जसलाई इच्छा लाग्छ त्यसले विश्वास गरोस्, तथा जसलाई इच्छा लाग्छ त्यसले अविश्वास गरोस् ।" वस्तुत, अत्याचारीहरूका निम्ति हामीले यस्तो अग्नि तयार गरेका छौं जसको (ज्वलन्त) आवरणले तिनीहरूलाई ढाक्नेछ । तथा यदि सहयोगका निम्ति तिनीहरूले क्रन्दन गरेमा, यस्तो पानीद्वारा तिनीहरूको सहयोग गरिनेछ जुन पग्लिँदो शीशा जस्तो हुनेछ । जसले (तिनीहरूको) मुखमण्डललाई जलाउने छ । त्यो कति नै भयानक पेयवस्तु रहेको छ, तथा एउटा

विश्रामस्थालको रूपमा त्यो (अग्नि) कति नै निकृष्ट रहेको छ ।

اِنَّ الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ اِنَّا لَا نُضِيْعُ اَجْرَ مَنْ اَحْسَنَ عَمَلًا ﴿۳۰﴾

३१. वस्तुतः ती व्यक्तिहरू जसले विश्वास गर्छन् तथा पुण्यकार्य गर्छन्– निश्चय नै, जसले पुण्यकार्य गर्छन् हामी कदापि तिनीहरूको प्रतिदानलाई व्यर्थ हुन दिँदैनौं ।

اُولٰٓئِكَ لَهُمْ جَنّٰتُ عَدْنٍ تَجْرِيْ مِنْ تَحْتِهِمُ الْاَنْهٰرُ يُحَلَّوْنَ فِيْهَا مِنْ اَسَاوِرَ مِنْ ذَهَبٍ وَّيَلْبَسُوْنَ ثِيَابًا خُضْرًا مِّنْ سُنْدُسٍ وَّاِسْتَبْرَقٍ مُّتَّكِـِٕيْنَ فِيْهَا عَلَى الْاَرَآئِكِ ؕ نِعْمَ الثَّوَابُ ؕ وَحَسُنَتْ مُرْتَفَقًا ﴿۳۱﴾

३२. ती उनै व्यक्तिहरू हुन जसलाई यस्ता शाश्वत बगैंचाहरू प्राप्त हुनेछन् जस मुनि नहरहरू बग्नेछन् । त्यहाँ तिनीहरूलाई सुनका कडाहरुद्वारा सुशोभित तुल्याइनेछ तथा तिनीहरूले पातला र मोटा बुटा हानेका रेशमका हरियावस्त्रहरू परिधान गर्नेछन्, त्यहाँ तिनीहरू सुसज्जित पलङमा अडेस् लगाएर बस्नेछन् । त्यो कति नै उत्तम प्रतिदान तथा कति नै उत्कृष्ट विश्रामास्थल रहेको छ !

وَاضْرِبْ لَهُمْ مَّثَلًا رَّجُلَيْنِ جَعَلْنَا لِاَحَدِهِمَا جَنَّتَيْنِ مِنْ اَعْنَابٍ وَّحَفَفْنٰهُمَا بِنَخْلٍ وَّجَعَلْنَا بَيْنَهُمَا زَرْعًا ﴿۳۲﴾

३३. तथा तिमी तिनीहरूसमक्ष दुईजना व्यक्तिहरूको दृष्टान्त वर्णन गरः तिनीहरूमध्ये एकजनालाई हामीले दुईवटा अङ्गुरका बगैंचाहरू उपलब्ध गरेका थियौं, तथा तिनीहरूलाई खजूरका वृक्षहरूद्वारा घेरेका थियौं, र ती दुई बगैंचाहरूभित्र हामीले केही अन्नको खेती लगाएका थियौं

كِلْتَا الْجَنَّتَيْنِ اٰتَتْ اُكُلَهَا وَلَمْ تَظْلِمْ مِّنْهُ شَيْـًٔا ۙ وَّفَجَّرْنَا خِلٰلَهُمَا نَهَرًا ﴿۳۳﴾

३४. ती दुबै बगैंचाहरूले (प्रचूररूपमा) आफ्नो फल उत्पादन गर्थे तथा त्यसमा लेशमात्र पनि कमी गर्दैनथे । तथा ती दुबैबीच हामीले एउटा नहर संचालन गरेका थियौं ।

وَّكَانَ لَهٗ ثَمَرٌ ۚ فَقَالَ لِصَاحِبِهٖ وَهُوَ يُحَاوِرُهٗٓ اَنَا اَكْثَرُ مِنْكَ مَالًا وَّاَعَزُّ نَفَرًا ﴿۳۴﴾

३५. तथा उसलाई (प्रचुरमात्रामा) फल प्राप्त थियो तथा उसले आफ्ना साथीलाई उससित (अहङ्कारका साथ) तर्क गर्दै भन्यो, "तिमीभन्दा म अधिक धनवान र दलको रूपमा अधिक शक्तिशाली रहेको छु

وَدَخَلَ جَنَّتَهُ وَهُوَ ظَالِمٌ لِّنَفْسِهِ قَالَ مَا أَظُنُّ أَن تَبِيدَ هَٰذِهِ أَبَدًا ﴿٣٥﴾

३६. आफ्नै आत्मामाथि अत्याचार गर्दै रहेको अवस्थामा त्यो व्यक्ति आफ्नो बगैंचामा प्रवेश गऱ्यो र उसले भन्यो, " यो कहिल्यै नष्ट हुनेछ भनी म ठान्दिन",

وَمَا أَظُنُّ السَّاعَةَ قَائِمَةً وَلَئِن رُّدِدتُّ إِلَىٰ رَبِّي لَأَجِدَنَّ خَيْرًا مِّنْهَا مُنقَلَبًا ﴿٣٦﴾

३७. "तथा (कहिल्यै) त्यो धडी आउला भन्ने मलाई लाग्दैन । तथा यदि कुनै दिन मलाई मेरा प्रतिपालक समक्ष फर्काएर लगियो भने पनि त्यहाँ मलाई अवश्य यहाँभन्दा उत्तम स्थान प्राप्त हुनेछ ।"

قَالَ لَهُ صَاحِبُهُ وَهُوَ يُحَاوِرُهُ أَكَفَرْتَ بِالَّذِي خَلَقَكَ مِن تُرَابٍ ثُمَّ مِن نُّطْفَةٍ ثُمَّ سَوَّاكَ رَجُلًا ﴿٣٧﴾

३८. उसको साथीले उसलाई वार्तालापको क्रममा भन्यो, "के तिमी उनीप्रति अविश्वास गर्छौ जसले तिमीलाई धूलोमाटोबाट र त्यसपछि शुकाणुबाट सृष्टि गरे, त्यसपछि पुनः उनले तिमीलाई (पूर्ण सर्वाङ्ग) मानिस बनाए?

لَّٰكِنَّا هُوَ اللَّهُ رَبِّي وَلَا أُشْرِكُ بِرَبِّي أَحَدًا ﴿٣٨﴾

३९. "परन्तु (मलाई भन्छौ भने) म त केवल अल्लाह नै मेरा प्रतिपालक हुन (भनी विश्वास राख्छु) तथा म कदापि कसैलाई आफ्ना प्रतिपालक को भागीदार बनाउने छैन

وَلَوْلَا إِذْ دَخَلْتَ جَنَّتَكَ قُلْتَ مَا شَاءَ اللَّهُ لَا قُوَّةَ إِلَّا بِاللَّهِ إِن تَرَنِ أَنَا أَقَلَّ مِنكَ مَالًا وَوَلَدًا ﴿٣٩﴾

४०. "तथा जब तिमी आफ्नो बगैंचामा प्रवेश गऱ्यौं तब तिमीले "अल्लाहले जे इच्छा गर्छन् (केवल) त्यही (पूर्ण हुन जान्छ) सम्पूर्ण सामर्थ्य अल्लाहलाई नै प्राप्त छ ।" भनी तिमीले किन भनेनौ? यदि तिमी मलाई धन र सन्तानमा आफूभन्दा निम्न ठान्छौ भने,

فَعَسَىٰ رَبِّي أَن يُؤْتِيَنِ خَيْرًا مِّن جَنَّتِكَ وَيُرْسِلَ عَلَيْهَا حُسْبَانًا مِّنَ السَّمَاءِ فَتُصْبِحَ صَعِيدًا زَلَقًا ﴿٤٠﴾

४१. "सम्भव छ, मेरा प्रतिपालक ले मलाई तिम्रो बगैंचाभन्दा कुनै उत्तम (वस्तु) प्रदान गरेनन्, तथा त्यो (तिम्रो बगैंचा) माथि भने आकाशबाट बज्र गिराउन ताकि त्यो एउटा पूर्ण बाँझो र चिप्लो भूमिमा परिणत हुन पुगोस् ।

४२. "अथवा त्यसको पानी (पातालमा) विलीन हुन पुगोस् फलस्वरूप तिमी त्यसलाई प्राप्त गर्नमा पूर्णरूपले असफल हुनेछौ ।"

أَوْ يُصْبِحَ مَآؤُهَا غَوْرًا فَلَنْ تَسْتَطِيعَ لَهُۥ طَلَبًا ﴿٤١﴾

४३. तथा उसको फल (साँच्चै नै) नष्ट गरियो, तथा त्यसमाथि आफूले गरेको खर्चको स्मरण गरी त्यो व्यक्तिले आफ्ना दुबै हात मल्न लाग्यो, कारण त्यो बगैंचा आफ्नो थाङ्ग्रोसहित उमाथि सोत्रिन पुगेको थियो । तथा उसले भन्यो, "हाय ! यदि मैले कसैलाई आफ्ना प्रतिपालक को भागीदार न बनाएको भए !"

وَأُحِيطَ بِثَمَرِهِۦ فَأَصْبَحَ يُقَلِّبُ كَفَّيْهِ عَلَىٰ مَآ أَنفَقَ فِيهَا وَهِيَ خَاوِيَةٌ عَلَىٰ عُرُوشِهَا وَيَقُولُ يَٰلَيْتَنِي لَمْ أُشْرِكْ بِرَبِّيٓ أَحَدًا ﴿٤٢﴾

४४. तथा अल्लाहविरुद्ध उसलाई सहयोग गर्ने कुनै समूह उसित थिएन न त उसले स्वयम् आफ्नो सुरक्षा नै गर्नसक्यो ।

وَلَمْ تَكُن لَّهُۥ فِئَةٌ يَنصُرُونَهُۥ مِن دُونِ ٱللَّهِ وَمَا كَانَ مُنتَصِرًا ﴿٤٣﴾

४५. यस्तो समयमा सहयोग केवल साँचा अल्लाहका तर्फबाट मात्र प्राप्त हुन्छ तथा प्रतिदान दिने सम्बन्धमा पनि उनी सर्वोत्तम रहेका छन् भने परिणामका सन्दर्भमा पनि उनी नै सर्वोत्तम रहेका छन् ।

هُنَالِكَ ٱلْوَلَٰيَةُ لِلَّهِ ٱلْحَقِّ ۚ هُوَ خَيْرٌ ثَوَابًا وَخَيْرٌ عُقْبًا ﴿٤٤﴾

४६. तथा तिनीहरूसमक्ष तिमी यस सांसारिक जीवनको दृष्टान्त वर्णन गर: यो त्यस पानी सदृश रहेको छ जसलाई हामी आकाशबाट बर्साउछौं, तथा त्यसमा पृथ्वीको वनस्पति मिसिन पुग्छ, त्यसपछि त्यो यस्ता शुष्क घाँसपातका टुक्राहरूमा परिणत हुनजान्छ जसलाई हावाले उठाउने गर्छ । तथा सम्पूर्ण कुराहरूमाथि अल्लाह पूर्ण सामर्थ्यवान रहेका छन् ।

وَٱضْرِبْ لَهُم مَّثَلَ ٱلْحَيَوٰةِ ٱلدُّنْيَا كَمَآءٍ أَنزَلْنَٰهُ مِنَ ٱلسَّمَآءِ فَٱخْتَلَطَ بِهِۦ نَبَاتُ ٱلْأَرْضِ فَأَصْبَحَ هَشِيمًا تَذْرُوهُ ٱلرِّيَٰحُ ۗ وَكَانَ ٱللَّهُ عَلَىٰ كُلِّ شَيْءٍ مُّقْتَدِرًا ﴿٤٥﴾

४७. सम्पत्ति र सन्तान यस साँसारिक जीवनका आभूषण हुन् । परन्तु स्थायी रहने पुण्यकार्यहरू (शीघ्र) प्रतिदान प्राप्तिस्वरूप तथा (भविष्यको) आशास्वरूप तिम्रा

ٱلْمَالُ وَٱلْبَنُونَ زِينَةُ ٱلْحَيَوٰةِ ٱلدُّنْيَا ۖ وَٱلْبَٰقِيَٰتُ ٱلصَّٰلِحَٰتُ خَيْرٌ عِندَ رَبِّكَ ثَوَابًا وَخَيْرٌ أَمَلًا ﴿٤٦﴾

प्रतिपालक का दृष्टिमा उत्तम रहेका छन् ।

وَيَوْمَ نُسَيِّرُ الْجِبَالَ وَتَرَى الْأَرْضَ بَارِزَةً وَّحَشَرْنٰهُمْ فَلَمْ نُغَادِرْ مِنْهُمْ أَحَدًا ﴿٤٨﴾

४८. तथा त्यसदिनका बारेमा (सोच) जब हामी पर्वतहरूलाई हिंडाउनेछौं तथा पृथ्वी (का जातिहरू) लाई तिमी (परस्पर एकअर्काका विरोधमा) कदम बढाउँदै गरेको देख्नेछौ तथा हामी तिनीहरू सबैलाई एकत्रित गर्नेछौं र तिनीहरूमध्ये कसैलाई पछि रहन दिनेछैनौं ।

وَعُرِضُوْا عَلٰى رَبِّكَ صَفًّا ۗ لَقَدْ جِئْتُمُوْنَا كَمَا خَلَقْنٰكُمْ أَوَّلَ مَرَّةٍ ۚ بَلْ زَعَمْتُمْ أَلَّنْ نَّجْعَلَ لَكُمْ مَّوْعِدًا ﴿٤٩﴾

४९. तथा तिनीहरूलाई पङ्क्तिमा (खडा गरी) तिम्रा प्रतिपालक का सामुने पेश गरिनेछः र भनिने छ "सर्वप्रथम जुन अवस्थामा हामीले तिमीहरूलाई सृष्टि गरेका थियौं त्यही अवस्थामा तिमीहरू निश्चयनै अहिले हाम्रा सामुन्ने उपस्थित भएका छौं । परन्तु तिमीहरूले के सोचेका थियौ भने तिमीहरू सित हामी (आफ्नो) वचन पूर्ण हुने कुनै समय निर्धारित गर्ने छैनौं ।"

وَوُضِعَ الْكِتٰبُ فَتَرَى الْمُجْرِمِيْنَ مُشْفِقِيْنَ مِمَّا فِيْهِ وَيَقُوْلُوْنَ يٰوَيْلَتَنَا مَالِ هٰذَا الْكِتٰبِ لَا يُغَادِرُ صَغِيْرَةً وَّلَا كَبِيْرَةً إِلَّا أَحْصٰهَا ۚ وَوَجَدُوْا مَا عَمِلُوْا حَاضِرًا ۗ وَلَا يَظْلِمُ رَبُّكَ أَحَدًا ﴿٥٠﴾

५०. तथा (तिनीहरूका सामुन्ने) पुस्तक प्रस्तुत गरिनेछ र त्यसमा रहेका कुराहरूबाट दोषी व्यक्तिहरू भयभीत भएको तिमीले देख्नेछौ; तथा तिनीहरूले भन्नेछन्, "हामीलाई धिक्कार छ ! यो कस्तो (प्रकारको) पुस्तक रहेको छ ! यसले ता साना अथवा ठूला कुनै कुरालाई पनि लिपिवद्ध नगरी छाडेको छैन ।" तथा तिनीहरूले गरेका सम्पूर्ण कुराहरूलाई तिनीहरूले (आफ्ना) सामुन्ने पाउनेछन् । तथा तिम्रा प्रतिपालक ले कसैमाथि अत्याचार गर्दैनन् ।

وَإِذْ قُلْنَا لِلْمَلٰٓئِكَةِ اسْجُدُوْا لِآدَمَ فَسَجَدُوْٓا إِلَّآ إِبْلِيْسَ ۗ كَانَ مِنَ الْجِنِّ فَفَسَقَ عَنْ أَمْرِ رَبِّهٖ ۗ أَفَتَتَّخِذُوْنَهٗ وَذُرِّيَّتَهٗٓ أَوْلِيَآءَ مِنْ دُوْنِيْ وَهُمْ لَكُمْ عَدُوٌّ ۚ بِئْسَ لِلظّٰلِمِيْنَ بَدَلًا ﴿٥١﴾

५१. तथा (त्यस समयको स्मरण गर) जब हामीले देवदूतहरूलाई भनेका थियौं, "आदमको आज्ञापालन गर, तथा इब्लिसले बाहेक तिनीहरू (सबै) ले आज्ञापालन गरे । त्यो जिन्नहरूमध्येको (एक) थियो; तथा उसले आफ्ना प्रतिपालक को आदेश

उल्लङ्घन गऱ्यो । त्यसो भए के तिमीहरू त्यसलाई र त्यसका सन्ततिलाई मेरो सट्टा आफ्ना मित्र बनाउछौ वस्तुतः तिनीहरू तिमीहरूका शत्रु रहेका छन्? अत्याचारीहरूका निम्ति त्यो सट्टा अति नै निकृष्ट रहेको छ ।

مَآ أَشْهَدتُّهُمْ خَلْقَ السَّمٰوٰتِ وَالْأَرْضِ وَلَا خَلْقَ أَنفُسِهِمْ ۖ وَمَا كُنتُ مُتَّخِذَ الْمُضِلِّينَ عَضُدًا ﴿٥١﴾

५१. मैले तिनीहरूलाई न आकाशमण्डल र पृथ्वी सृष्टि गर्दा साक्षी राखेको थिएँ न त तिनीहरूको आफ्नै सृष्टिका समयमा नै; जुन व्यक्तिहरूले (मानिसहरूलाई) पथभ्रष्ट तुल्याउँछन् न त म तिनीहरूलाई सहयोगी बनाउन सक्ने थिएँ ।

وَيَوْمَ يَقُولُ نَادُوا شُرَكَآءِيَ الَّذِينَ زَعَمْتُمْ فَدَعَوْهُمْ فَلَمْ يَسْتَجِيبُوا لَهُمْ وَجَعَلْنَا بَيْنَهُم مَّوْبِقًا ﴿٥٢﴾

५२. तथा त्यस दिनको (स्मरण गर) जब उनले भन्नेछन्, "जसलाई तिमीहरू मेरा भागीदार हुन् भनी ठान्थ्यौ तिनीहरूलाई पुकार ।" तब तिनीहरूले उनीहरूलाई पुकार्नेछन्, परन्तु उनीहरूले तिनीहरूलाई उत्तर दिनेछैनन्; तथा तिनीहरूका बीचमा हामी एउटा -ध्वस्तताको) बाधा खडा गर्नेछौं

وَرَاَ الْمُجْرِمُونَ النَّارَ فَظَنُّوٓا أَنَّهُم مُّوَاقِعُوهَا وَلَمْ يَجِدُوا عَنْهَا مَصْرِفًا ﴿٥٣﴾

५३. तथा अपराधीहरूले अग्निलाई देख्नेछन् र तिनीहरू त्यसमा खस्न लागिरहेछन् भनी जान्नेछन्; तथा त्यसबाट उम्कने कुनै मार्ग तिनीहरूले पाउनेछैनन् ।

وَلَقَدْ صَرَّفْنَا فِي هٰذَا الْقُرْاٰنِ لِلنَّاسِ مِن كُلِّ مَثَلٍ ۚ وَكَانَ الْإِنسَانُ أَكْثَرَ شَيْءٍ جَدَلًا ﴿٥٤﴾

५४. तथा, हामीले यस कुरानमा मानवजातिको (कल्याणका) निम्ति निश्चय नै सबै (प्रकारका) दृष्टान्तहरू विभिन्न तरिकाले वर्णन गरेका छौं, परन्तु मानिस सर्वाधिक झगडालु रहेको छ ।

وَمَا مَنَعَ النَّاسَ أَن يُؤْمِنُوٓا إِذْ جَآءَهُمُ الْهُدٰى وَيَسْتَغْفِرُوا رَبَّهُمْ إِلَّآ أَن تَأْتِيَهُمْ سُنَّةُ الْأَوَّلِينَ أَوْ يَأْتِيَهُمُ الْعَذَابُ قُبُلًا ﴿٥٥﴾

५५. तथा मानिसहरूलाई तिनीहरूसमक्ष मार्गदर्शनको आगमनपश्चात् विश्वास स्थापना गर्न र आफ्ना प्रतिपालक सित क्षमायाचना गर्नबाट केवल कुन कुराले बाधा पुऱ्याएको थियो भने, तिनीहरूले पहिलाका मानिसहरूको चाल चलनकै अनुसरण गर्न

रुचाए (त्यस्तै परिणामको) अथवा तिनीहरूलाई सामुन्नेबाट (अल्लाहको) दण्डले समातोस् भनी प्रतक्षिा गरे ।

وَمَا نُرْسِلُ الْمُرْسَلِينَ إِلَّا مُبَشِّرِينَ وَمُنذِرِينَ ۚ وَيُجَادِلُ الَّذِينَ كَفَرُوا بِالْبَاطِلِ لِيُدْحِضُوا بِهِ الْحَقَّ ۖ وَاتَّخَذُوا آيَاتِي وَمَا أُنذِرُوا هُزُوًا ﴿٥٧﴾

५७. तथा हामी सन्देशबाहकहरूलाई केवल सुभसन्देशवाहक स्वरूप र सतर्ककारीस्वरूप पठाउने गर्छौं । तथा ती अविश्वासी व्यक्तिहरूले (भने) असत्यलाई अंगाली त्यसद्वारा सत्यसलाई मेटाउनका निम्ति झगडा गर्ने गर्छन् । तथा तिनीहरूले मेरा चिह्नहरूलाई र तिनीहरूलाई दिइएको चेतावनीलाई (केवल) ठट्टाको साधन बनाएका छन् ।

وَمَنْ أَظْلَمُ مِمَّن ذُكِّرَ بِآيَاتِ رَبِّهِ فَأَعْرَضَ عَنْهَا وَنَسِيَ مَا قَدَّمَتْ يَدَاهُ ۚ إِنَّا جَعَلْنَا عَلَىٰ قُلُوبِهِمْ أَكِنَّةً أَن يَفْقَهُوهُ وَفِي آذَانِهِمْ وَقْرًا ۖ وَإِن تَدْعُهُمْ إِلَى الْهُدَىٰ فَلَن يَهْتَدُوا إِذًا أَبَدًا ﴿٥٨﴾

५८. तथा त्यो व्यक्तिभन्दा अधिक अत्याचारी अन्य को हुनसक्छ जसलाई त्यसका प्रतिपालक का चिह्नहरू स्मरण गराइँदा समेत त्यो तिनीहरूबाट विमुख हुन्छ तथा आफ्नै हातले अघि पठाएका कुराहरूलाई बिर्सन्छ? वस्तुत: हामीले तिनीहरूका हृदयमाथि पर्दाहरू रखिदिएका छौं तथा तिनीहरूका कानमा बहिरोपन रहेको छ त्यसकारण तिनीहरूले त्यसलाई बुझ्दैनन् । तथा यदि तिमीले तिनीहरूलाई सन्मार्गतर्फ बोलाएमा तिनीहरूले त्यसलाई कदापि स्वीकार गर्नेछैनन् ।

وَرَبُّكَ الْغَفُورُ ذُو الرَّحْمَةِ ۖ لَوْ يُؤَاخِذُهُم بِمَا كَسَبُوا لَعَجَّلَ لَهُمُ الْعَذَابَ ۚ بَل لَّهُم مَّوْعِدٌ لَّن يَجِدُوا مِن دُونِهِ مَوْئِلًا ﴿٥٩﴾

५९. तथा तिम्रा प्रतिपालक परम क्षमाशील, परम करुणाशील छन् । यदि उनले तिनीहरूको आर्जनका कारण तिनीहरूलाई विनाश गर्न चाहेका भए, उनले अवश्य तिनीहरूका निम्ति शीघ्र सजाय प्रस्तुत गर्ने थिए । परन्तु तिनीहरूका निम्ति एउटा समय निर्धारित छ जसबाट (बच्न) तिनीहरूले कुनै आश्रय पाउने छैनन ।

وَتِلْكَ الْقُرَىٰ أَهْلَكْنَاهُمْ لَمَّا ظَلَمُوا وَجَعَلْنَا لِمَهْلِكِهِم مَّوْعِدًا ﴿٦٠﴾

६०. तथा ती नगरहरू हुन जसलाई हामीले तिनीहरूका अन्यायपूर्ण कार्यहरूका कारण ध्वंस गऱ्यौं । तथा तिनीहरूको

विनाशका निम्ति पहिला नै हामीले एउटा म्याद निर्धारित गरेका थियौं ।

वَإِذْ قَالَ مُوسَىٰ لِفَتَاهُ لَا أَبْرَحُ حَتَّىٰ أَبْلُغَ مَجْمَعَ الْبَحْرَيْنِ أَوْ أَمْضِيَ حُقُبًا ﴿٦٠﴾

६१. तथा (त्यस समयको स्मरण गर) जब मूसाले आफ्ना नबयुवक (साथी) लाई भनेका थिए, "जबसम्म म ती दुई समुद्रहरूको सङगमस्थलसम्म पुग्नेछैन तबसम्म म विश्राम लिनेछैन, अथवा म युगौंसम्म यात्रा गर्नेछु ।"

فَلَمَّا بَلَغَا مَجْمَعَ بَيْنِهِمَا نَسِيَا حُوتَهُمَا فَاتَّخَذَ سَبِيلَهُ فِي الْبَحْرِ سَرَبًا ﴿٦١﴾

६२. परन्तु जब तिनीहरू ती दुई (समुद्रहरू) को सङ्मस्थलमा पुगे, तिनीहरूले आफ्नो माछो बिर्सिए, तथा त्यसले समुद्रमा शीघ्रताका साथ (दगुर्दै) आफ्नो बाटो लियो ।

فَلَمَّا جَاوَزَا قَالَ لِفَتَاهُ آتِنَا غَدَاءَنَا لَقَدْ لَقِينَا مِن سَفَرِنَا هَٰذَا نَصَبًا ﴿٦٢﴾

६३. तथा जब तिनीहरू अघि बढे, उनले आफ्नो नवयुवक (साथी) लाई भने: "हाम्रो बिहानीको खाजा लिएर आउ । निश्चय नै, हाम्रो यस यात्राका कारण हामीलाई अति थकाई लागेको छ ।"

قَالَ أَرَأَيْتَ إِذْ أَوَيْنَا إِلَى الصَّخْرَةِ فَإِنِّي نَسِيتُ الْحُوتَ وَمَا أَنسَانِيهُ إِلَّا الشَّيْطَانُ أَنْ أَذْكُرَهُ وَاتَّخَذَ سَبِيلَهُ فِي الْبَحْرِ عَجَبًا ﴿٦٣﴾

६४. उसले उत्तर दियो, "तिमीले देखेनौ, जब हामी विश्रामका निम्ति ढुङ्गामाथि बसेका थियौं, मैले माछो (त्यहीं) बिर्सिएँ? तथा त्यसबारे (तिमीसित) उल्लेख गर्नबाट शैतानबाहेक अन्य कसैले मलाई भुलाएन । त्यसले आश्चर्यरूपमा समुद्रतर्फ आफ्नो बाटो लियो ।"

قَالَ ذَٰلِكَ مَا كُنَّا نَبْغِ فَارْتَدَّا عَلَىٰ آثَارِهِمَا قَصَصًا ﴿٦٤﴾

६५. उनले भने, " त्यही नै त्यो हो जसलाई हामी खोज्दै थियौं ।" अत: तिनीहरू दुबै आफ्ना पाइला पहिल्याउँदै फर्किए ।

فَوَجَدَا عَبْدًا مِّنْ عِبَادِنَا آتَيْنَاهُ رَحْمَةً مِّنْ عِندِنَا وَعَلَّمْنَاهُ مِن لَّدُنَّا عِلْمًا ﴿٦٥﴾

६६. त्यसपछि तिनीहरूले हाम्रा भृत्य (सेवक) हरूमध्ये एउटा यस्तो भृत्यलाई भेट्टाए, जसलाई हामीले आफ्नो करुणादान गरेका थियौं तथा उसलाई हामीले आफ्ना जुनाफबाट ज्ञान प्रदान गरेका थियौं ।

قَالَ لَهُ مُوسٰى هَلْ اَتَّبِعُكَ عَلٰٓى اَنْ تُعَلِّمَنِ مِمَّا عُلِّمْتَ رُشْدًا ﴿٦٦﴾

६७. मूसाले उसलाई भने, "जुन मार्गदर्शन तिमीलाई सिकाइएको छ त्यसबाट तिमीले मलाई केही सिकाउने सर्तमा के म तिम्रो अनुसरण गर्न सक्छु?"

قَالَ اِنَّكَ لَنْ تَسْتَطِيْعَ مَعِيَ صَبْرًا ﴿٦٧﴾

६८. उसले उत्तर दियो, "तिमी धैर्यका साथ कदापि मेरो सङ्गतमा रहन सक्नेछैनौं

وَكَيْفَ تَصْبِرُ عَلٰى مَا لَمْ تُحِطْ بِهٖ خُبْرًا ﴿٦٨﴾

६९. "तथा जुन कुरो तिमीले बुझेका छैनौ त्यस (ज्ञानका) कुराप्रति कसरी तिमीले धैर्यधारण गर्न सक्छौ र?"

قَالَ سَتَجِدُنِيْٓ اِنْ شَآءَ اللّٰهُ صَابِرًا وَّلَآ اَعْصِيْ لَكَ اَمْرًا ﴿٦٩﴾

७०. उनले भने, यदि अल्लाहको इच्छा रहेमा तिमीले मलाई धैर्यधारी पाउनेछौ, तथा कुनै कुरामा म तिम्रो अवज्ञा गर्नेछैन ।

قَالَ فَاِنِ اتَّبَعْتَنِيْ فَلَا تَسْـَٔلْنِيْ عَنْ شَيْءٍ حَتّٰٓى اُحْدِثَ لَكَ مِنْهُ ذِكْرًا ﴿٧٠﴾

७१. उसले भन्यो, "ठिक छ, यदि तिमीले मेरो अनुसरण गर्ने हो भने तबसम्म कुनै कुराबारे प्रश्न नगर्नु जबसम्म म स्वयम् त्यसबारे तिमीसित वार्ता गर्नेछैन ।"

فَانْطَلَقَا حَتّٰٓى اِذَا رَكِبَا فِى السَّفِيْنَةِ خَرَقَهَا قَالَ اَخَرَقْتَهَا لِتُغْرِقَ اَهْلَهَا لَقَدْ جِئْتَ شَيْـًٔا اِمْرًا ﴿٧١﴾

७२. अतः तिनीहरू दुबैले प्रस्थान गरे । यसैक्रममा जब तिनीहरू एउटा डुंगामा सवार भए, उसले त्यसमा प्वाल पार्‍यो । (मूसाले) भने, "के यसमा रहेका व्यक्तिहरूलाई डुबाउनका निम्ति तिमीले यसमा प्वाल पारेका हौ? तिमीले निश्चय नै एउटा अशुभ कार्य गरेका छौ ।"

قَالَ اَلَمْ اَقُلْ اِنَّكَ لَنْ تَسْتَطِيْعَ مَعِيَ صَبْرًا ﴿٧٢﴾

७३. उसले उत्तर दियो, "तिमी धैर्यका साथ मेरो सङ्गतमा रहन सक्नेछैनौ भनी मैले (तिमीलाई) भनेको थिइँन र?"

قَالَ لَا تُؤَاخِذْنِيْ بِمَا نَسِيْتُ وَلَا تُرْهِقْنِيْ مِنْ اَمْرِيْ عُسْرًا ﴿٧٣﴾

७४. (मूसाले) भने, "मैले (त्यो कुरा) बिर्सेकोमा तिमी मलाई नपक तथा यस (भूलका) कारण मप्रति कठोर व्यवहार नगर ।"

فَانْطَلَقَا حَتّٰٓى اِذَا لَقِيَا غُلٰمًا فَقَتَلَهٗ قَالَ

७५. अतः तिनीहरू अघि बढ्दै गए, तथा जब तिनीहरूको एउटा केटासित भेट भयो,

اَقَتَلْتَ نَفْسًا زَكِيَّةً بِغَيْرِ نَفْسٍ ؕ لَقَدْ جِئْتَ شَيْـًٔا نُّكْرًا ﴿٧٤﴾

उसले त्यसको बध गऱ्यो । (मूसाले) भने, के तिमीले एउटा निर्दोष व्यक्तिलाई (उसले कसैको हत्या नगरेको स्थितिमा) बिनाकारण बध गऱ्यौ? निश्चय नै, तिमीले एउटा घृणनीय कार्य गरेका छौ ।"

قَالَ اَلَمْ اَقُلْ لَّكَ اِنَّكَ لَنْ تَسْتَطِيْعَ مَعِيَ صَبْرًا ﴿٧٥﴾

७६. उसले उत्तर दियो, "तिमी धैर्यका साथ मेरो सङ्गतमा रहन सक्नेछैनौ भनी मैले तिमीलाई भनेको थिइँन र?"

قَالَ اِنْ سَاَلْتُكَ عَنْ شَيْءٍۭ بَعْدَهَا فَلَا تُصٰحِبْنِيْ ۚ قَدْ بَلَغْتَ مِنْ لَّدُنِّيْ عُذْرًا ﴿٧٦﴾

७७. मूसाले भने, "यदि यसपछि पनि मैले तिमीलाई कुनै कुराका बारेमा सोधें भने तिमीले मलाई आफ्नो सङ्गतमा नराख्नू । त्यस अवस्थामा तिमी मेरा तर्फबाट पर्याप्त माफी प्राप्तिका हकदार भइसक्ने छौ ।"

فَانْطَلَقَا ٚ حَتّٰٓى اِذَآ اَتَيَآ اَهْلَ قَرْيَةِ ِۨاسْتَطْعَمَآ اَهْلَهَا فَاَبَوْا اَنْ يُّضَيِّفُوْهُمَا فَوَجَدَا فِيْهَا جِدَارًا يُّرِيْدُ اَنْ يَّنْقَضَّ فَاَقَامَهٗ ؕ قَالَ لَوْ شِئْتَ لَتَّخَذْتَ عَلَيْهِ اَجْرًا ﴿٧٧﴾

७८. अत: तिनीहरू अघि बढे तथा जब तिनीहरू एउटा नगरका बासिन्दाहरूसमक्ष पुगे, तिनीहरूले त्यस नगरका मानिसहरूसित भोजन मागे, परन्तु उनीहरूले तिनीहरूलाई (आफ्ना) अतिथि बनाउन अस्वीकार गरे । तथा तिनीहरूले त्यहाँ एउटा यस्तो पर्खाल प्राप्त गरे जुन ढल्नै लागेको थियो, तथा उसले त्यसलाई मरम्मत गऱ्यो । (मूसाले) भने, "यदि तिमीले चाहेका भए, यसको तिमी पारिश्रमिक लिन सक्ने थियौ ।"

قَالَ هٰذَا فِرَاقُ بَيْنِيْ وَبَيْنِكَ ۚ سَاُنَبِّئُكَ بِتَاْوِيْلِ مَا لَمْ تَسْتَطِعْ عَّلَيْهِ صَبْرًا ﴿٧٨﴾

७९. उसले भन्यो, "यही नै म र तिम्राबीच (मार्ग) विच्छेद हुने समय रहेको छ । म तिमीलाई त्यस कुराको अर्थ बताउने छैन जुन कुराप्रति तिमीले धैर्य धारण गर्न सकेका थिएनौ:

اَمَّا السَّفِيْنَةُ فَكَانَتْ لِمَسٰكِيْنَ يَعْمَلُوْنَ فِي الْبَحْرِ فَاَرَدْتُّ اَنْ اَعِيْبَهَا وَكَانَ وَرَآءَهُمْ مَّلِكٌ يَّاْخُذُ كُلَّ سَفِيْنَةٍ غَصْبًا ﴿٧٩﴾

८०. जहाँसम्म त्यस डुंगाको प्रश्न छ, "त्यो ता समुद्रमा काम गर्ने (केही) गरीबहरूको थियो, तथा मैले त्यसलाई क्षतिग्रस्त तुल्याउन चाहें, कारण तिनीहरूको

एउटा राजा थियो जसले हरेक डुंगालाई बलपूर्वक हड्प्ने गर्थ्यो ।

وَأَمَّا الْغُلٰمُ فَكَانَ أَبَوٰهُ مُؤْمِنَيْنِ فَخَشِينَآ أَنْ يُّرْهِقَهُمَا طُغْيَانًا وَّكُفْرًا ﴿٨٠﴾

८१. "तथा जहाँसम्म त्यो युवक, उसका मातापिता भने विश्वासी थिए, त्यसले विद्रोह र अविश्वासद्वारा तिनीहरूलाई कष्ट देला भन्ने हामीलाई आशङ्का थियो ।

فَأَرَدْنَآ أَنْ يُّبْدِلَهُمَا رَبُّهُمَا خَيْرًا مِّنْهُ زَكٰوةً وَّأَقْرَبَ رُحْمًا ﴿٨١﴾

८२. "त्यसकारण तिनीहरूका प्रतिपालक ले तिनीहरूलाई त्यस केटाका बदलामा पवित्रता र आन्तरिक प्रेम (दया) का सम्बन्धमा त्यो भन्दा अधिक उत्तम (पुत्र) प्रदान गरुन भन्ने हामीले इच्छा गर्‍यौं ।

وَأَمَّا الْجِدَارُ فَكَانَ لِغُلٰمَيْنِ يَتِيمَيْنِ فِي الْمَدِينَةِ وَكَانَ تَحْتَهُ كَنْزٌ لَّهُمَا وَكَانَ أَبُوهُمَا صَالِحًا ۚ فَأَرَادَ رَبُّكَ أَنْ يَّبْلُغَآ أَشُدَّهُمَا وَيَسْتَخْرِجَا كَنْزَهُمَا ۖ رَحْمَةً مِّنْ رَّبِّكَ ۚ وَمَا فَعَلْتُهُ عَنْ أَمْرِي ۚ ذٰلِكَ تَأْوِيلُ مَا لَمْ تَسْطِعْ عَّلَيْهِ صَبْرًا ﴿٨٢﴾

८३. "तथा त्यो पर्खाल भने त्यस नगरका दुईवटा टुहुरा केटाहरूको थियो, तथा त्यसमनि तिनीहरूको एउटा खजाना थियो, तथा तिनीहरूका पिता एकजना सत्यनिष्ठ (व्यक्ति) थिए, त्यसकारण तिम्रा प्रतिपालक को तिनीहरू आफ्नो परिपक्वता (को उमेरमा) पुगुन् र तिम्रा प्रमुको अनुग्रहस्वरूप आफ्नो खजानालाई बाहिर निकालून भन्ने इच्छा थियो; तथा त्यो कार्य मैले स्वेच्छाले गरेको थिइँन । जुन कुराप्रति तिमीले धैर्यधारण गर्न सकेका थिएनौ, त्यस कुराको वास्तविकता यही नै हो ।"

وَيَسْأَلُونَكَ عَنْ ذِي الْقَرْنَيْنِ ۖ قُلْ سَأَتْلُوا عَلَيْكُمْ مِّنْهُ ذِكْرًا ﴿٨٣﴾

८४. तथा तिनीहरू तिमीसित जुल्-कारनैनका सम्बन्धमा प्रश्न गर्छन् । तिमी भन, "म अवश्य उनको कथा सम्बन्धमा तिमीहरूसमक्ष (केही) उल्लेख गर्नेछु ।"

إِنَّا مَكَّنَّا لَهُ فِي الْأَرْضِ وَآتَيْنٰهُ مِنْ كُلِّ شَيْءٍ سَبَبًا ﴿٨٤﴾

८५. हामीले उनलाई पृथ्वीमा प्रतिष्ठित तुल्याएका थियौं तथा उनलाई सम्पूर्णवस्तुहरूको (जोरजाम गर्ने) साधनहरू प्रदान गरेका थियौं ।

فَاَتْبَعَ سَبَبًا ﴿٨٦﴾

८६. त्यसपछि उनले एउटा (निश्चित) मार्ग अपनाए ।

حَتّٰٓى اِذَا بَلَغَ مَغْرِبَ الشَّمْسِ وَجَدَهَا تَغْرُبُ فِيْ عَيْنٍ حَمِئَةٍ وَّ وَجَدَ عِنْدَهَا قَوْمًا ؕ قُلْنَا يٰذَا الْقَرْنَيْنِ اِمَّآ اَنْ تُعَذِّبَ وَاِمَّآ اَنْ تَتَّخِذَ فِيْهِمْ حُسْنًا ﴿٨٧﴾

८७. यस क्रममा जब उनी सूर्यास्त हुने स्थानमा पुगे, उनले त्यसलाई एउटा धमिलो पानीको पोखरीमा डुब्दै गरेको पाए, तथा त्यसकै निकटमा उनले एकथरि मानिसहरू भेटाए । हामीले भन्यौं, "ऐ जूल-कारनैन, तिमी तिनीहरूलाई या त दण्ड देउ अथवा (तिमीले चाहेमा) तिनीहरूसित उदारतापूर्ण व्यवहार गर ।"

قَالَ اَمَّا مَنْ ظَلَمَ فَسَوْفَ نُعَذِّبُهٗ ثُمَّ يُرَدُّ اِلٰى رَبِّهٖ فَيُعَذِّبُهٗ عَذَابًا نُّكْرًا ﴿٨٨﴾

८८. उनले भने, "जसले अत्याचार गर्छ त्यसलाई ता हामी अवश्य दण्ड दिनेछौं; त्यसपछि उसलाई उसका प्रतिपालक तर्फ फर्काएर लगिनेछ, जसले उसलाई कठोर दण्ड दिनेछन् ।"

وَاَمَّا مَنْ اٰمَنَ وَعَمِلَ صَالِحًا فَلَهٗ جَزَآءَ ۨ الْحُسْنٰى ۚ وَسَنَقُوْلُ لَهٗ مِنْ اَمْرِنَا يُسْرًا ﴿٨٩﴾

८९. परन्तु जसले विश्वास गर्छ र सद्व्यवहार गर्ने गर्छ त्यसलाई भने उत्तम प्रतिदान प्राप्त हुनेछ, तथा त्यस व्यक्तिसित हामी आफ्नो आदेशद्वारा सरल (शब्दमा) वार्ता गर्नेछौं ।

ثُمَّ اَتْبَعَ سَبَبًا ﴿٩٠﴾

९०. त्यसपछि उनीले (एउटा अर्को) मार्गको अनुसरण गरे ।

حَتّٰٓى اِذَا بَلَغَ مَطْلِعَ الشَّمْسِ وَجَدَهَا تَطْلُعُ عَلٰى قَوْمٍ لَّمْ نَجْعَلْ لَّهُمْ مِّنْ دُوْنِهَا سِتْرًا ﴿٩١﴾

९१. त्यसैक्रममा, जब उनी सूर्योदय हुने स्थानमा पुगे, त्यहाँ उनले सूर्यलाई यस्ता व्यक्तिहरूमाथि झुल्कँदै गरेको पाए जसका निम्ति हामीले त्यसविरुद्ध कुनै छहारीको निर्माण गरेका थिएनौं ।

كَذٰلِكَ ؕ وَقَدْ اَحَطْنَا بِمَا لَدَيْهِ خُبْرًا ﴿٩٢﴾

९२. (त्यो घटना ठिक) यसै प्रकार (घटेको थियो) । वस्तुतः उनीसित रहेका सम्पूर्ण

वस्तुहरूबारे हामीलाई पूर्णज्ञान रहेको थियो

ثُمَّ اَتْبَعَ سَبَبًا ﴿٩٢﴾

९३. त्यसपछि उनले एउटा (अर्कै) मार्गको अनुसरण गरे ।

حَتّٰٓى اِذَا بَلَغَ بَيْنَ السَّدَّيْنِ وَجَدَ مِنْ دُوْنِهِمَا قَوْمًا ۙ لَّا يَكَادُوْنَ يَفْقَهُوْنَ قَوْلًا ﴿٩٣﴾

९४. त्यसैकममा, उनी जब दुई पर्वतका बीचमा रहेको एक स्थानमा पुगे, त्यहाँ उनले ती पर्वतमुनि केही यस्ता मानिसहरूलाई भेट्टाए जसले दुर्लभै कुनै कुरा बुझ्न सक्थे ।

قَالُوْا يٰذَا الْقَرْنَيْنِ اِنَّ يَاْجُوْجَ وَمَاْجُوْجَ مُفْسِدُوْنَ فِى الْاَرْضِ فَهَلْ نَجْعَلُ لَكَ خَرْجًا عَلٰٓى اَنْ تَجْعَلَ بَيْنَنَا وَبَيْنَهُمْ سَدًّا ﴿٩٤﴾

९५. तिनीहरूले भने, "हे जूल्-कारनैन्,निस्सन्देह याजूज र माजूज्ले धर्तीमा अशान्तिको सिर्जना गरिरहेछन्, त्यसकारण तिनीहरू र हामीबीच तिमीले एउटा रोक (पर्खाल) खडा गरिदिने शर्तमा के हामीले तिमीलाई केही नजराना दिन सक्छौं त?

قَالَ مَا مَكَّنِّيْ فِيْهِ رَبِّيْ خَيْرٌ فَاَعِيْنُوْنِيْ بِقُوَّةٍ اَجْعَلْ بَيْنَكُمْ وَبَيْنَهُمْ رَدْمًا ﴿٩٥﴾

९६. उनले उत्तर दिए, "यस सम्बन्धमा मेरा प्रतिपालक ले मलाई प्रदान गरेको सामर्थ्य अति नै उत्तम रहेको छ, परन्तु शारीरिक शक्तिद्वारा तिमीहरूले मलाई सहयोग दिन सक्छौ, तिमीहरू र तिनीहरूका बीच म एउटा पर्खाल खडा गर्नेछु ।

اٰتُوْنِيْ زُبَرَ الْحَدِيْدِ ۗ حَتّٰٓى اِذَا سَاوٰى بَيْنَ الصَّدَفَيْنِ قَالَ انْفُخُوْا ۗ حَتّٰٓى اِذَا جَعَلَهٗ نَارًا ۙ قَالَ اٰتُوْنِيْٓ اُفْرِغْ عَلَيْهِ قِطْرًا ﴿٩٦﴾

९७. "तिमीहरू मलाई फलामका ढिक्काहरू प्रदान गर ।" -तिनीहरूले त्यसै गरे) अत: जब उनले ती दुबै पर्वतका बीचमा तिनीहरूको उचाइ बराबर (पर्खाल खडा) गरे, उनले भने, "(अब) तिमीहरू (आफ्ना खलाँतीद्वारा अग्नि) फूक" । (तिनीहरूले फुकेर जलाए) । अत: जब उनले त्यसलाई अग्निस्वरूप (रातो) तुल्याए, तब उनले भने। "मलाई पग्लिएको तामा प्रदान गर ताकि म त्यसमा थित्यो (तामा)

खन्याऊ ।"

९८. अतः तिनीहरू (याजूज् र माजूज्) त्यसमाथि चढ्न असमर्थ भए, न त तिनीहरूले त्यसमा प्वाल पार्न सके ।

فَمَا اسْطَاعُوْٓا اَنْ يَّظْهَرُوْهُ وَ مَا اسْتَطَاعُوْا لَهٗ نَقْبًا ﴿٩٨﴾

९९. (त्यसपछि) उनले भने, "यो मेरा प्रतिपालक को कृपास्वरूप रहेको छ । परन्तु जब मेरा प्रतिपालक को प्रतिश्रुत (समय) आउनेछ, उनले यसलाई तोडेर टुक्राटुक्रा पार्नेछन् । तथा मेरा प्रतिपालक को प्रतिश्रुति (निश्चितरूपमा) सत्य रहेको छ ।"

قَالَ هٰذَا رَحْمَةٌ مِّنْ رَّبِّيْ ۚ فَاِذَا جَآءَ وَعْدُ رَبِّيْ جَعَلَهٗ دَكَّآءَ ۚ وَكَانَ وَعْدُ رَبِّيْ حَقًّا ﴿٩٩﴾

१००. तथा त्यस दिन हामी तिनीहरूमध्ये केही व्यक्तिहरूलाई अन्य केही माथि आक्रमण गर्न छाडि दिनेछौं, तथा (त्यसबेला) नरसिङ्गा बजाइनेछ । तब तिनीहरू सबैलाई हामी एकत्रित गर्नेछौं ।

وَ تَرَكْنَا بَعْضَهُمْ يَوْمَئِذٍ يَّمُوْجُ فِيْ بَعْضٍ وَّ نُفِخَ فِي الصُّوْرِ فَجَمَعْنٰهُمْ جَمْعًا ﴿١٠٠﴾

१०१. तथा त्यसदिन हामी नर्कलाई अविश्वासीहरूका आमुन्ने-सामुन्ने प्रस्तुत गर्नेछौं –

وَّ عَرَضْنَا جَهَنَّمَ يَوْمَئِذٍ لِّلْكٰفِرِيْنَ عَرْضًا ﴿١٠١﴾

१०२. ती व्यक्तिहरू जसका नेत्रहरू मेरो चेतावनीतर्फ (ध्यान दिन) बाट (बेपर्वाहीको) पर्दाद्वारा ढाकिएका थिए, तथा तिनीहरू सुन्न पनि सक्दैनथे ।

الَّذِيْنَ كَانَتْ اَعْيُنُهُمْ فِيْ غِطَآءٍ عَنْ ذِكْرِيْ وَكَانُوْا لَا يَسْتَطِيْعُوْنَ سَمْعًا ﴿١٠٢﴾

१०३. के ती अविश्वासी व्यक्तिहरू मलाई छाडी तिनीहरूले मेरा सेवकहरूलाई संरक्षक बनाउन सक्नेछौं भनी ठान्छन्? हामीले निश्चय पूर्वक अविश्वासीहरूका निम्ति नर्कलाई आतिथ्य बनाएका छौं ।

اَفَحَسِبَ الَّذِيْنَ كَفَرُوْٓا اَنْ يَّتَّخِذُوْا عِبَادِيْ مِنْ دُوْنِيْٓ اَوْلِيَآءَ ۚ اِنَّآ اَعْتَدْنَا جَهَنَّمَ لِلْكٰفِرِيْنَ نُزُلًا ﴿١٠٣﴾

१०४. तिमी भन, "जुन व्यक्तिहरू आफ्ना कार्यहरूकै कारण सर्वाधिक घाटाग्रस्त रहेका

قُلْ هَلْ نُنَبِّئُكُمْ بِالْاَخْسَرِيْنَ اَعْمَالًا ﴿١٠٤﴾

छन् के हामी तिमीहरूलाई तिनीहरूबारे अवगत गराऔं?

१०५. "ती व्यक्तिहरू उनै हुन् जसको (सम्पूर्ण) परिश्रम सांसरिक जीवन (सम्बन्धी कुराहरूका खोज) मा नै व्यर्थ हुन गएको छ, तथा तिनीहरू भने आफूले उत्तम कार्य गरिरहेछौं भनी ठान्छन् ।"

اَلَّذِيْنَ ضَلَّ سَعْيُهُمْ فِي الْحَيٰوةِ الدُّنْيَا وَهُمْ يَحْسَبُوْنَ اَنَّهُمْ يُحْسِنُوْنَ صُنْعًا ﴿١٠٤﴾

१०६. ती उनै व्यक्तिहरू हुन जो आफ्ना प्रतिपालक का चिह्नहरू तथा उनीसितको साक्षातकारप्रति अविश्वास गर्छन् । अत: तिनीहरूका कार्यहरू व्यर्थ हुनपुगेका छन्, तथा पुनरुत्थानका दिन हामी तिनीहरूलाई कुनै वजन (महत्त्व) दिने छैनौं ।

اُولٰٓئِكَ الَّذِيْنَ كَفَرُوْا بِاٰيٰتِ رَبِّهِمْ وَلِقَآئِهٖ فَحَبِطَتْ اَعْمَالُهُمْ فَلَا نُقِيْمُ لَهُمْ يَوْمَ الْقِيٰمَةِ وَزْنًا ﴿١٠٥﴾

१०७. त्यही तिनीहरूको प्रतिदान रहेको छ- नर्क: कारण तिनीहरूले अविश्वास गरे, तथा मेरा चिह्नहरू र मेरा सन्देशवाहकहरूलाई ठट्टाको साधन बनाए ।

ذٰلِكَ جَزَآؤُهُمْ جَهَنَّمُ بِمَا كَفَرُوْا وَاتَّخَذُوْٓا اٰيٰتِيْ وَرُسُلِيْ هُزُوًا ﴿١٠٦﴾

१०८. निश्चय नै, जसले विश्वास गर्छन् र पुण्य कार्य गर्छन्, तिनीहरूलाई आतिथ्यस्वरुप स्वर्गका बगैंचाहरू प्राप्त हुनेछन् ।

اِنَّ الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ كَانَتْ لَهُمْ جَنّٰتُ الْفِرْدَوْسِ نُزُلًا ﴿١٠٧﴾

१०९. त्यहाँ तिनीहरू सदा बसोबास गर्नेछन्; तिनीहरूले त्यहाँबाट कुनै स्थानान्तर चाहनेछैनन् ।

خٰلِدِيْنَ فِيْهَا لَا يَبْغُوْنَ عَنْهَا حِوَلًا ﴿١٠٨﴾

११०. तिमी भन, "यदि मेरा प्रतिपालक का वाणीहरूका निम्ति समुद्र नै मसी बन्थ्यो भने पनि निश्चय नै मेरा प्रतिपालक का वाणीहरू सकिनुभन्दा पहिला त्यो समुद्र को पानी नै समाप्त हुने थियो, यद्यपि हामी त्यसमा त्यति नै ल्याएर (थप) सहयोगस्वरूप किन नहालौं ।"

قُلْ لَّوْ كَانَ الْبَحْرُ مِدَادًا لِّكَلِمٰتِ رَبِّيْ لَنَفِدَ الْبَحْرُ قَبْلَ اَنْ تَنْفَدَ كَلِمٰتُ رَبِّيْ وَلَوْ جِئْنَا بِمِثْلِهٖ مَدَدًا ﴿١٠٩﴾

قُلْ إِنَّمَآ أَنَا بَشَرٌ مِّثْلُكُمْ يُوحَىٰٓ إِلَيَّ أَنَّمَآ إِلَٰهُكُمْ إِلَٰهٌ وَاحِدٌ ۖ فَمَن كَانَ يَرْجُوا لِقَآءَ رَبِّهِۦ فَلْيَعْمَلْ عَمَلًا صَالِحًا وَلَا يُشْرِكْ بِعِبَادَةِ رَبِّهِۦٓ أَحَدًۢا ﴿١١١﴾

ع ١٢ ٢

१११. तिमी भन, "म तिमीहरूजस्तै केवल एउटा मानिस हुँ, (परन्तु) तिमीहरूका उपास्य केवल एउटै मात्र उपास्य हुन् भनी मैले आकाशवाणी प्राप्त गरेको छु । त्यसकारण जसले आफ्ना ती प्रतिपालक सित भेट गर्ने आशा राख्छ त्यसले पुण्यकर्म गरोस्, तथा उसले आफ्ना प्रतिपालक को उपासनामा अन्य कसैलाई भागीदार नतुल्याओस् ।"

سُوْرَةُ مَرْيَمَ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ تِسْعٌ وَّتِسْعُوْنَ اٰيَةً وَّسِتَّةُ رُكُوْعَاتٍ

## मरियम
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ﴿١﴾

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

كٓهٰيٰعٓصٓ ﴿٢﴾

२. काफ-हा-या- ऐन साद* ।

ذِكْرُ رَحْمَتِ رَبِّكَ عَبْدَهٗ زَكَرِيَّا ﴿٣﴾

३. (यो) तिम्रा प्रतिपालकले आफ्ना भृत्य जकारियामाथि (प्रदर्शन गरेको) कृपाको एउटा विवरण हो ।

اِذْ نَادٰى رَبَّهٗ نِدَآءً خَفِيًّا ﴿٤﴾

४. जब उनले आफ्ना प्रतिपालकलाई मधुरो स्वरले पुकारे,

قَالَ رَبِّ اِنِّيْ وَهَنَ الْعَظْمُ مِنِّيْ وَ اشْتَعَلَ الرَّاْسُ شَيْبًا وَّ لَمْ اَكُنْۢ بِدُعَآئِكَ رَبِّ شَقِيًّا ﴿٥﴾

५. उनले भने, "हे मेरा प्रतिपालक, मेरा हड्डीहरू निश्चितरूपमा खिइएर दुर्बल हुन पुगेका छन्, तथा वृद्धावस्थाले गर्दा टाउको भने भडकिन लाग्यो, परन्तु हे मेरा प्रतिपालक, तिम्रो प्रार्थना गरी कदापि म अभागी भएको छैन ।

وَ اِنِّيْ خِفْتُ الْمَوَالِيَ مِنْ وَّرَآءِيْ وَكَانَتِ امْرَاَتِيْ عَاقِرًا فَهَبْ لِيْ مِنْ لَّدُنْكَ وَلِيًّا ﴿٦﴾

६. "तथा म मेरा पछिका आफ्ना निकटसम्बन्धीहरूका बारेमा डराउँछु, तथा मेरी पत्नी बाँझी छिन् । त्यसकारण आफ्ना जुनाफबाट मलाई एकजना उत्तराधिकारी प्रदान गर,

يَّرِثُنِيْ وَ يَرِثُ مِنْ اٰلِ يَعْقُوْبَ ۖ وَ اجْعَلْهُ رَبِّ رَضِيًّا ﴿٧﴾

७. "जुन मेरा र याकूबका खानदानको वारिस होओस् तथा हे मेरा प्रतिपालक, त्यसलाई तिमी आफ्नो प्रियपात्र बनाउ ।"

---

* तिमी सबैका निम्ति पर्याप्त र तिमी नै प्रकृत मार्गदर्शक, हे सर्वज्ञ, सर्वसत्य प्रतिपालक!

८. "ऐ जकारिया, हामी निश्चय नै तिमीलाई एउटा पुत्रको शुभसन्देश दिन्छौं जसको नाम याह्या* हुनेछ । उनीभन्दा पहिला कसैलाई हामीले त्यस नामले सृष्टि गरेका छैनौं ।"

يَٰزَكَرِيَّآ إِنَّا نُبَشِّرُكَ بِغُلَٰمٍ ٱسْمُهُۥ يَحْيَىٰ لَمْ نَجْعَل لَّهُۥ مِن قَبْلُ سَمِيًّا ﴿٧﴾

९. उनले भने, "हे मेरा प्रतिपालक, जब मेरी पत्नी बाँझी छिन् र म बुढेसकालको पल्लोछेउमा पुगिसकेको छु भने कसरी मलाई पुत्र प्राप्त हुनसक्छ र?"

قَالَ رَبِّ أَنَّىٰ يَكُونُ لِى غُلَٰمٌ وَكَانَتِ ٱمْرَأَتِى عَاقِرًا وَقَدْ بَلَغْتُ مِنَ ٱلْكِبَرِ عِتِيًّا ﴿٨﴾

१०. उनले भने, "त्यो त्यस्तै हो ।" परन्तु तिम्रा प्रतिपालक के भन्छन् भने, "यो कार्य मेरा निम्ति सरल रहेको छ, तथा यसअघि जब तिम्रो कुनै अस्तित्त्व नै थिएन मैले तिमीलाई सृष्टि गरिसकेको छु ।"

قَالَ كَذَٰلِكَ قَالَ رَبُّكَ هُوَ عَلَىَّ هَيِّنٌ وَقَدْ خَلَقْتُكَ مِن قَبْلُ وَلَمْ تَكُ شَيْـًٔا ﴿٩﴾

११. उनले भने, "हे मेरा प्रतिपालक, मेरा निम्ति कुनै चिह्न निर्धारित गर ।" (प्रतिपालकले) भने, "तिम्रा निम्ति के निर्देशन रहेको छ भने तिमीले लगातार (तीनदिन) र तीन रातसम्म कसैसित कुनै वार्ता नगर्नू ।",

قَالَ رَبِّ ٱجْعَل لِّىٓ ءَايَةً قَالَ ءَايَتُكَ أَلَّا تُكَلِّمَ ٱلنَّاسَ ثَلَٰثَ لَيَالٍ سَوِيًّا ﴿١٠﴾

१२. त्यसपछि उनी (आफ्नो) कोठाबाट निस्किएर आफ्ना मानिसहरूसमक्ष पुगे र तिनीहरूलाई सङ्केतद्वारा बिहानी र बेलुकी (प्रतिपालकको) गुणगान गर्ने आग्रह गरे ।

فَخَرَجَ عَلَىٰ قَوْمِهِۦ مِنَ ٱلْمِحْرَابِ فَأَوْحَىٰٓ إِلَيْهِمْ أَن سَبِّحُوا۟ بُكْرَةً وَعَشِيًّا ﴿١١﴾

१३. "ऐ याह्या, दृढताका साथ पुस्तकलाई समाऊ ।" तथा उनलाई बाल्यकालमै हामीले तत्वज्ञान प्रदान गरेका थियौं ।

يَٰيَحْيَىٰ خُذِ ٱلْكِتَٰبَ بِقُوَّةٍ وَءَاتَيْنَٰهُ ٱلْحُكْمَ صَبِيًّا ﴿١٢﴾

१४. तथा आफ्ना जुनाफबाट उनलाई (हृदयको) कोमलता र पवित्रता प्रदान गर्‍यौं

وَحَنَانًا مِّن لَّدُنَّا وَزَكَوٰةً وَكَانَ تَقِيًّا ﴿١٣﴾

---

* जोन ।

तथा उनी धर्मात्मा व्यक्ति थिए ।

وَبَرًّا بِوَالِدَيْهِ وَلَمْ يَكُن جَبَّارًا عَصِيًّا ﴿١٤﴾

१५. तथा उनी आफ्ना माता-पिताका लागि कर्तव्यरायण थिए । तथा उनी घमण्डी (र) अवज्ञाकारी थिएनन् ।

وَسَلَٰمٌ عَلَيْهِ يَوْمَ وُلِدَ وَيَوْمَ يَمُوتُ وَيَوْمَ يُبْعَثُ حَيًّا ﴿١٥﴾

१६. तथा जुन दिन तिनी जन्मिएका थिए त्यस दिन पनि उनीप्रति शान्ति रहेको थियो, तथा तिनको मृत्युका दिन (पनि) र उनलाई पुनर्जीवित गरिने दिनमा (पनि उनमा शान्ति कायम रहनेछ) ।

وَاذْكُرْ فِي الْكِتَٰبِ مَرْيَمَ إِذِ انتَبَذَتْ مِنْ أَهْلِهَا مَكَانًا شَرْقِيًّا ﴿١٦﴾

१७. तथा पुस्तकमा (उल्लेख भएअनुसार) मरियमको (घटनाको) वर्णन गर । जब तिनी आफ्ना नातेदारहरूलाई छाडी पूर्वदिशाको एउटा स्थानतर्फ लागिन् ।

فَاتَّخَذَتْ مِن دُونِهِمْ حِجَابًا فَأَرْسَلْنَا إِلَيْهَا رُوحَنَا فَتَمَثَّلَ لَهَا بَشَرًا سَوِيًّا ﴿١٧﴾

१८. तथा स्वयम्लाई तिनीहरूबाट ओझेलमा पुऱ्याइन । तब हामीले तिनीसमक्ष आफ्नो देवदूत पठायौं तथा तिनीसमक्ष उ एउटा पूर्ण मानिसको रूपमा प्रकट भयो ।

قَالَتْ إِنِّي أَعُوذُ بِالرَّحْمَٰنِ مِنكَ إِن كُنتَ تَقِيًّا ﴿١٨﴾

१९. तिनले भनिन्, "यदि तिमीमा (उनको) डर रहेको छ भने म तिमीबाट तिनै कृपालु - अल्लाह)को शरण चाहन्छु ।"

قَالَ إِنَّمَا أَنَا رَسُولُ رَبِّكِ لِأَهَبَ لَكِ غُلَٰمًا زَكِيًّا ﴿١٩﴾

२०. उसले भन्यो, "म त केवल तिम्रा प्रतिपालकको एउटा दूत हुँ, ताकि तिमीलाई एउटा सत्यनिष्ठ पुत्र प्रदान गर्न सकूँ ।"

قَالَتْ أَنَّىٰ يَكُونُ لِي غُلَٰمٌ وَلَمْ يَمْسَسْنِي بَشَرٌ وَلَمْ أَكُ بَغِيًّا ﴿٢٠﴾

२१. तिनले भनिन, "जब मलाई न कुनै पुरुषले छोएको छ, न त म कहिल्यै दुष्कार्यमा लिप्त रहेकी छु (तब) मलाई कसरी पुत्र प्राप्त हुनसक्छ र?"

قَالَ كَذَٰلِكِ قَالَ رَبُّكِ هُوَ عَلَيَّ هَيِّنٌ وَلِنَجْعَلَهُ آيَةً لِّلنَّاسِ وَرَحْمَةً مِّنَّا وَكَانَ أَمْرًا مَّقْضِيًّا ﴿٢١﴾

२२. उसले उत्तर दियो, "कुरा त ठिक हो ।" परन्तु तिम्रा प्रतिपालक के भन्छन् भने, "यो -कार्य) मेरा निम्ति सरल रहेको छ;

(तथा हामी त्यसै गर्नेछौं) ताकि उनलाई हामी मानिसहरूका लागि एउटा चिह्न बनाऔं । तथा हाम्रा जुनाफबाट एउटा करुणास्वरूप, तथा यो एउटा अटल निर्णय रहेको छ ।"

فَحَمَلَتْهُ فَانْتَبَذَتْ بِهٖ مَكَانًا قَصِيًّا ﴿٢٢﴾

२३. अतः तिनले उसलाई (गर्भमा) धारण गरिन् तथा उसलाई लिएर एउटा टाढाको स्थानतर्फ प्रस्थान गरिन् ।

فَاَجَآءَهَا الْمَخَاضُ اِلٰى جِذْعِ النَّخْلَةِ ۚ قَالَتْ يٰلَيْتَنِيْ مِتُّ قَبْلَ هٰذَا وَكُنْتُ نَسْيًا مَّنْسِيًّا ﴿٢٣﴾

२४. तथा उनलाई प्रसूतिवेदनाले एउटा खजूरको बोटतर्फ डोऱ्यायो । तिनले भनिन्, "हाय ! म यसअघि नै मरेकी भए र एउटा विस्मृत वस्तुसरह भएकी भए !"

فَنَادٰىهَا مِنْ تَحْتِهَآ اَلَّا تَحْزَنِيْ قَدْ جَعَلَ رَبُّكِ تَحْتَكِ سَرِيًّا ﴿٢٤﴾

२५. त्यसपछि उसले (फरिस्ता) उनलाई उनीको मुन्तिरबाट (के भन्दै) बोलायो (भने), "तिमी चिन्तित नहोउ । तिम्रा प्रतिपालकले तिमी मुन्तिर एउटा कुलो बगाइदिएका छन्;

وَهُزِّيْٓ اِلَيْكِ بِجِذْعِ النَّخْلَةِ تُسٰقِطْ عَلَيْكِ رُطَبًا جَنِيًّا ﴿٢٥﴾

२६. तथा खजूरको वृक्षको हाँगालाई समातेर आफूतर्फ तान; उसले तिमीसमक्ष ताजा र पाकेका खजूर खसाल्ने छ ।

فَكُلِيْ وَاشْرَبِيْ وَقَرِّيْ عَيْنًا ۚ فَاِمَّا تَرَيِنَّ مِنَ الْبَشَرِ اَحَدًا ۙ فَقُوْلِيْٓ اِنِّيْ نَذَرْتُ لِلرَّحْمٰنِ صَوْمًا فَلَنْ اُكَلِّمَ الْيَوْمَ اِنْسِيًّا ﴿٢٦﴾

२७. "अतः खाउ र पिउ तथा (आफ्ना) नेत्रलाई ठण्डा गर । तथा तिमीले कुनै पुरुषलाई देखेमा के भन भने, "मैले कृपालु (प्रतिपालक) का निम्ति एउटा व्रतको भाकल गरेकी छु; त्यसकारण आजका दिन म कुनै मानिससित बोल्नेछैन ।"

فَاَتَتْ بِهٖ قَوْمَهَا تَحْمِلُهٗ ۗ قَالُوْا يٰمَرْيَمُ لَقَدْ جِئْتِ شَيْـًٔا فَرِيًّا ﴿٢٧﴾

२८. त्यसपछि तिनले उनलाई बोकेर आफन्तहरूसमक्ष उसलाई पुऱ्याइन् । तिनीहरूले भने, "हे मरियम, तिमीले एउटा विचित्र वस्तु लिएर आएकी छौ ।

يٰٓاُخْتَ هٰرُوْنَ مَا كَانَ اَبُوْكِ امْرَاَ سَوْءٍ وَّمَا كَانَتْ اُمُّكِ بَغِيًّا ﴿٢٨﴾

२९. "ऐ हारुनकी बहिनी, तिम्रा पिता त दुष्ट व्यक्ति थिएनन् न त तिम्रा माता नै

दुश्चरित्रा स्त्री थिइन् ।"

فَأَشَارَتْ إِلَيْهِ ۖ قَالُوا كَيْفَ نُكَلِّمُ مَن كَانَ فِي الْمَهْدِ صَبِيًّا ﴿٣٠﴾

३०. तब तिनले उसतर्फ सङ्केत गरिन् । तिनीहरूले भने, "कोकामा रहेको बालकसित हामीले कसरी वार्ता गर्नसक्छौं र?

قَالَ إِنِّي عَبْدُ اللَّهِ آتَانِيَ الْكِتَابَ وَجَعَلَنِي نَبِيًّا ﴿٣١﴾

३१. उनले भने, "म निश्चय नै अल्लाहको भृत्य हुँ । उनले मलाई पुस्तक प्रदान गरेका छन्, तथा मलाई एउटा नबी बनाएका छन्";

وَجَعَلَنِي مُبَارَكًا أَيْنَ مَا كُنتُ وَأَوْصَانِي بِالصَّلَاةِ وَالزَّكَاةِ مَا دُمْتُ حَيًّا ﴿٣٢﴾

३२. "तथा म जहाँ कहीं रहे तापनि उनले मलाई मङ्गलमय बनाएका छन् र जबसम्म म जीवित रहने छु तबसम्म मलाई नमाज पढ्ने र जगातदान गर्ने आदेश दिएका छन् ।

وَبَرًّا بِوَالِدَتِي وَلَمْ يَجْعَلْنِي جَبَّارًا شَقِيًّا ﴿٣٣﴾

३३. तथा (उनले मलाई) मेरी माताको कर्त्तव्यपरायण (बनाएका छन्), तथा उनले मलाई घमण्डी (र) अभागी बनाएका छैनन् ।

وَالسَّلَامُ عَلَيَّ يَوْمَ وُلِدتُّ وَيَوْمَ أَمُوتُ وَيَوْمَ أُبْعَثُ حَيًّا ﴿٣٤﴾

३४. "तथा म जन्मिएका दिन पनि ममाथि शान्ति थियो, तथा जब म मर्नेछु त्यसदिन पनि (ममाथि शान्ति रहनेछ), तथा त्यसदिन पनि जब मलाई जीवित गरी उठाईने छ ।"

ذَٰلِكَ عِيسَى ابْنُ مَرْيَمَ ۚ قَوْلَ الْحَقِّ الَّذِي فِيهِ يَمْتَرُونَ ﴿٣٥﴾

३५. यिनी नै मरियम पुत्र, इसा थिए जुन कुरामा तिनीहरू सन्देह गर्छन् त्यसको वास्तविक बयान -यही नै हो) ।

مَا كَانَ لِلَّهِ أَن يَتَّخِذَ مِن وَلَدٍ ۖ سُبْحَانَهُ ۚ إِذَا قَضَىٰ أَمْرًا فَإِنَّمَا يَقُولُ لَهُ كُن فَيَكُونُ ﴿٣٦﴾

३६. आफ्ना निम्ति पुत्र ग्रहण गर्नु अल्लाहको (महानता) योग्य कुरो होइन । उनी पवित्र छन् । जब उनी कुनै कुराको निर्णय गर्छन्, त्यसलाई उनले भन्छन्, "भएस !" तब त्यो हुनजान्छ ।

وَإِنَّ اللَّهَ رَبِّي وَرَبُّكُمْ فَاعْبُدُوهُ ۚ هَٰذَا صِرَاطٌ مُّسْتَقِيمٌ ﴿٣٧﴾

३७. (इसाले भने), "निश्चय नै अल्लाह मेरा प्रतिपालक र तिमीहरूका प्रतिपालक

हुन् । अत: (केवल) उनकै मात्र उपासना गर; यही नै सन्मार्ग रहेका छ ।"

فَاخْتَلَفَ الْأَحْزَابُ مِنْ بَيْنِهِمْ ۚ فَوَيْلٌ لِّلَّذِينَ كَفَرُوا مِن مَّشْهَدِ يَوْمٍ عَظِيمٍ ﴿٣٧﴾

३८. परन्तु तिनीहरूमध्ये केही समूहहरूले परस्पर मतभेदको सिर्जना गरे; अत: त्यस महान दिनको साक्षातकारका कारण जसले अविश्वास गर्छन् तिनीहरूको विनाश होस् ।

أَسْمِعْ بِهِمْ وَأَبْصِرْ يَوْمَ يَأْتُونَنَا ۖ لَٰكِنِ الظَّالِمُونَ الْيَوْمَ فِي ضَلَالٍ مُّبِينٍ ﴿٣٨﴾

३९. त्यसदिन जब तिनीहरू हामीसमक्ष आउने छन् तिनीहरूको सुन्ने र देख्ने शक्ति कति अश्चर्यपूर्ण हुनेछ ! परन्तु आज भने ती अत्याचारीहरू स्पष्ट पथभ्रष्टमा परेका छन् ।

وَأَنذِرْهُمْ يَوْمَ الْحَسْرَةِ إِذْ قُضِيَ الْأَمْرُ وَهُمْ فِي غَفْلَةٍ وَهُمْ لَا يُؤْمِنُونَ ﴿٣٩﴾

४०. तथा त्यस सन्तापपूर्ण दिनप्रति तिनीहरूलाई सावधान गर जब सम्पूर्ण मामिलाहरूको निर्णय हुनेछ । परन्तु अहिले तिनीहरू लापर्बाही (को अवस्था) मा छन्, त्यसकारण तिनीहरू विश्वास गर्दैनन् ।

إِنَّا نَحْنُ نَرِثُ الْأَرْضَ وَمَنْ عَلَيْهَا وَإِلَيْنَا يُرْجَعُونَ ﴿٤٠﴾

४१. यस पृथ्वी तथा यहाँ रहने (सबै मानिसहरू) का हामी नै अवश्य उत्तराधिकारी हुनेछौं; तथा तिनीहरू (सबै) लाई हामीतर्फ फर्काएर ल्याइनेछ ।

وَاذْكُرْ فِي الْكِتَابِ إِبْرَاهِيمَ ۚ إِنَّهُ كَانَ صِدِّيقًا نَّبِيًّا ﴿٤١﴾

४२. तथा पुस्तकमा उल्लेख भएअनुसार इब्राहिमको (घटनाको) वर्णन गर । उनी एकजना सत्यनिष्ठ (पुरुष र) एकजना सन्देशवाहक थिए ।

إِذْ قَالَ لِأَبِيهِ يَا أَبَتِ لِمَ تَعْبُدُ مَا لَا يَسْمَعُ وَلَا يُبْصِرُ وَلَا يُغْنِي عَنكَ شَيْئًا ﴿٤٢﴾

४३. जब उनले आफ्ना पितालाई भने, "हे मेरा पिता, जसले न सुन्छ न देख्छ न तिम्रो कुनै मङ्गल गर्न सक्छ, त्यसको किन तिमी उपासना गर्छौ?

يَا أَبَتِ إِنِّي قَدْ جَاءَنِي مِنَ الْعِلْمِ مَا لَمْ يَأْتِكَ فَاتَّبِعْنِي أَهْدِكَ صِرَاطًا سَوِيًّا ﴿٤٣﴾

४४. "हे मेरा पिता, मलाई त्यो ज्ञान प्राप्त भएको छ जुन ज्ञान तिमीलाई प्राप्त छैन; त्यसकारण मेरो अनुसरण गर, म तिमीलाई सन्मार्ग प्रदर्शन गर्नेछु ।

४५. "हे मेरा पिता, "सैतानको उपासना नगर; सैतान निश्चय नै कृपालु -अल्लाह)को विद्रोही रहेको छ ।

يٰٓاَبَتِ لَا تَعْبُدِ الشَّيْطٰنَ ؕ اِنَّ الشَّيْطٰنَ كَانَ لِلرَّحْمٰنِ عَصِيًّا ﴿٤٥﴾

४६. "हे मेरा पिता, "कृपालु (प्रतिपालक)का तर्फबाट तिमीमाथि कुनै दण्ड बर्सेला र त्यसको फलस्वरूप तिमी सैतानका साथी बनौला भनी म डराउँछु ।"

يٰٓاَبَتِ اِنِّيْٓ اَخَافُ اَنْ يَّمَسَّكَ عَذَابٌ مِّنَ الرَّحْمٰنِ فَتَكُوْنَ لِلشَّيْطٰنِ وَلِيًّا ﴿٤٦﴾

४७. उनले भने, "ऐ इब्राहिम, के तिमी मेरा उपास्यहरूबाट विमुख हुन लागिरहेछौ? यदि तिमी पछि हटेनौ भने, म तिमीलाई अवश्य ढुङ्गा हानेर मार्नेछु । अब केही समयका निम्ति मलाई एक्लै छाडिदेउ ।"

قَالَ اَرَاغِبٌ اَنْتَ عَنْ اٰلِهَتِيْ يٰٓاِبْرٰهِيْمُ ۚ لَئِنْ لَّمْ تَنْتَهِ لَاَرْجُمَنَّكَ وَاهْجُرْنِيْ مَلِيًّا ﴿٤٧﴾

४८. (इब्राहिमले) भने, "तिमीमाथि शान्ति वर्णन होओस् । म तिम्रा निम्ति आफ्ना प्रतिपालकसित क्षमायाचना गर्नेछु । उनी मप्रति अति नै कृपालु रहेका छन् ।

قَالَ سَلٰمٌ عَلَيْكَ ۚ سَاَسْتَغْفِرُ لَكَ رَبِّيْ ؕ اِنَّهٗ كَانَ بِيْ حَفِيًّا ﴿٤٨﴾

४९. "तथा म तिमीहरूबाट र तिनीहरूबाट जसलाई तिमीहरू अल्लाहका स्थानमा पुकार्ने गर्छौ, अलग्गै रहने छु तथा म आफ्ना प्रतिपालककै प्रार्थना गर्नेछु सम्भवत: मेरा प्रतिपालकको प्रार्थनामा म कदापि अभागी हुनेछैन ।"

وَاَعْتَزِلُكُمْ وَمَا تَدْعُوْنَ مِنْ دُوْنِ اللّٰهِ وَاَدْعُوْا رَبِّيْ ۖ عَسٰٓى اَلَّآ اَكُوْنَ بِدُعَآءِ رَبِّيْ شَقِيًّا ﴿٤٩﴾

५०. अत: जब उनी तिनीहरूबाट र अल्लाहलाई छाडी जसलाई तिनीहरूले पुज्ने गर्थे, अलग भए, हामीले उनलाई इस्हाक र याकूब प्रदान गर्‍यौं, तथा प्रत्येकलाई हामीले नबी बनायौं ।

فَلَمَّا اعْتَزَلَهُمْ وَمَا يَعْبُدُوْنَ مِنْ دُوْنِ اللّٰهِ ۙ وَهَبْنَا لَهٗٓ اِسْحٰقَ وَيَعْقُوْبَ ؕ وَكُلًّا جَعَلْنَا نَبِيًّا ﴿٥٠﴾

५१. तथा हामीले तिनीहरूलाई हाम्रो अनुग्रह: हामीले उच्चदर्जा, सत्य प्रसिद्धि प्रदान गर्‍यौं ।

وَوَهَبْنَا لَهُمْ مِّنْ رَّحْمَتِنَا وَجَعَلْنَا لَهُمْ لِسَانَ صِدْقٍ عَلِيًّا ﴿٥١﴾

५२. तथा पुस्तकमा -उल्लेख भए)अनुसार मूसाको (कथाको) वर्णन गर । उनी

وَاذْكُرْ فِي الْكِتٰبِ مُوْسٰٓى ؗ اِنَّهٗ كَانَ مُخْلَصًا وَّكَانَ رَسُوْلًا نَّبِيًّا ﴿٥٢﴾

निश्चयपूर्वक एकजना निर्वाचित व्यक्ति तथा उनी एकजना सन्देशबाहक, नबी थिए

وَنَادَيْنٰهُ مِنْ جَانِبِ الطُّوْرِ الْاَيْمَنِ وَقَرَّبْنٰهُ نَجِيًّا ﴿٥٢﴾

५३. तथा हामीले उनलाई (तूर) पर्वतका दायाँतर्फबाट बोलायौं, तथा (विशेष) वार्तालापका निम्ति उनलाई (आफ्ना) निकट ल्यायौं ।

وَوَهَبْنَا لَهٗ مِنْ رَّحْمَتِنَاۤ اَخَاهُ هٰرُوْنَ نَبِيًّا ﴿٥٣﴾

५४. तथा हामीले उनलाई आफ्नो अनुग्रहबाट उनका भाई हारुनलाई नबीको रूपमा प्रदान गऱ्यौं ।

وَاذْكُرْ فِى الْكِتٰبِ اِسْمٰعِيْلَ ز اِنَّهٗ كَانَ صَادِقَ الْوَعْدِ وَكَانَ رَسُوْلًا نَّبِيًّا ﴿٥٤﴾

५५. तथा पुस्तकमा (उल्लेख भए)अनुसार इस्लामईलको (घटना) वर्णन गर । उनी आफ्ना वचनका पक्का थिए । तथा उनी एकजना सन्देशवाहक नबी (सिद्धपुरुष) थिए

وَكَانَ يَاْمُرُ اَهْلَهٗ بِالصَّلٰوةِ وَالزَّكٰوةِ ص وَكَانَ عِنْدَ رَبِّهٖ مَرْضِيًّا ﴿٥٥﴾

५६. उनी आफ्ना मानिसहरूलाई नमाज पढ्ने र जगात दिने, अर्ती दिने गर्थे तथा उनी आफ्ना प्रतिपालकका धेरै प्रियपात्र थिए

وَاذْكُرْ فِى الْكِتٰبِ اِدْرِيْسَ ز اِنَّهٗ كَانَ صِدِّيْقًا نَّبِيًّا ﴿٥٦﴾

५७. तथा पुस्तकमा (उल्लेखभए)अनुसार इद्रिस्को (घटना) वर्णन गर । उनी एकजना सत्यनिष्ठ (मानिस) र एकजना नबी थिए ।

وَّرَفَعْنٰهُ مَكَانًا عَلِيًّا ﴿٥٧﴾

५८. तथा उनलाई हामीले एउटा उच्च स्थानसम्म उत्थान गऱ्यौं ।

اُولٰٓئِكَ الَّذِيْنَ اَنْعَمَ اللّٰهُ عَلَيْهِمْ مِّنَ النَّبِيّٖنَ مِنْ ذُرِّيَّةِ اٰدَمَ ق وَمِمَّنْ حَمَلْنَا مَعَ نُوْحٍ ز وَّ مِنْ ذُرِّيَّةِ اِبْرٰهِيْمَ وَ اِسْرَآءِيْلَ ز وَ مِمَّنْ هَدَيْنَا وَاجْتَبَيْنَا ط اِذَا تُتْلٰى عَلَيْهِمْ اٰيٰتُ الرَّحْمٰنِ خَرُّوْا سُجَّدًا وَّ بُكِيًّا ﴿٥٨﴾

५९. यी सबै तिनै व्यक्तिहरू हुन् जसमाथि नबीहरूमध्ये अल्लाहले आफ्नो कृपा वर्षण गरे, यिनीहरू आदमका सन्तति थिए, तथा ती व्यक्तिहरू(का सन्तान)मध्ये थिए जसलाई हामीले नूहसित -नाउमा) सवार गरेका थियौं, तथा ती इब्राहिमका र इजरायलका सन्तानमध्येकै थिए; तथा तिनीहरू) ती व्यक्तिहरूमध्येका थिए जसलाई हामीले मार्गप्रदर्शन गरेका थियौं र चुनेका थियौं । तिनीहरूसमक्ष जब कृपालु

(प्रतिपालक)का निर्देशनहरूको पाठ गरिन्थ्यो, तिनीहरू (अल्लाहका सामुन्ने) दण्डवत गर्दै र रुँदै धर्तीमा घोप्टिन पुग्दथे ।

فَخَلَفَ مِنْۢ بَعْدِهِمْ خَلْفٌ اَضَاعُوا الصَّلٰوةَ وَاتَّبَعُوا الشَّهَوٰتِ فَسَوْفَ يَلْقَوْنَ غَيًّا ﴿٦٠﴾

६०. त्यसपछि तिनीहरूपश्चात् यस्ता उत्तराधिकारीहरूको आगमन भयो जसले नमाजको अनादर गरे तथा कुवाञ्छनाहरूका पछि लागे । अतः तिनीहरू शीघ्र नै विनाश हुनेछन् ।

اِلَّا مَنْ تَابَ وَاٰمَنَ وَعَمِلَ صَالِحًا فَاُولٰٓئِكَ يَدْخُلُوْنَ الْجَنَّةَ وَلَا يُظْلَمُوْنَ شَيْـًٔا ﴿٦١﴾

६१. सिवाय ती व्यक्तिहरू, जसले प्रायश्चित गरे र विश्वास गर्नेछन् तथा पुण्यकार्य गरे । तिनीहरू भने स्वर्गमा प्रवेश गरे तथा तिनीहरूमाथि किञ्चित पनि अत्याचार हुनेछैन ।

جَنّٰتِ عَدْنِ ِۨالَّتِيْ وَعَدَ الرَّحْمٰنُ عِبَادَهٗ بِالْغَيْبِ ؕ اِنَّهٗ كَانَ وَعْدُهٗ مَاْتِيًّا ﴿٦٢﴾

६२. यस्ता चिरकाल रहने बगैंचाहरूमा जसको वचन परम कृपालु -अल्लाह)ले अदृश्यरूपमा आफ्ना भृत्यहरूलाई दिएका छन् । उनको वचन अवश्यरूपमा पूर्ण भएरै छाड्छ ।

لَا يَسْمَعُوْنَ فِيْهَا لَغْوًا اِلَّا سَلٰمًا ؕ وَلَهُمْ رِزْقُهُمْ فِيْهَا بُكْرَةً وَّعَشِيًّا ﴿٦٣﴾

६३. तिनीहरूले त्यहाँ शन्ति(को अभिनन्दन)बाहेक कुनै प्रकारको अनर्थ कुरो सुन्नेछैनन्: तथा त्यहाँ तिनीहरूलाई बिहानी र बेलुकीका लागि आफ्नो जीविका (खाद्य) प्राप्त हुनेछ ।

تِلْكَ الْجَنَّةُ الَّتِيْ نُوْرِثُ مِنْ عِبَادِنَا مَنْ كَانَ تَقِيًّا ﴿٦٤﴾

६४. यो त्यो स्वर्ग हो जसका उत्तराधिकारी हामी हाम्रा भृत्यहरूमध्ये धर्मनिष्ठ व्यक्तिहरूलाई बनाउछौं ।

وَمَا نَتَنَزَّلُ اِلَّا بِاَمْرِ رَبِّكَ ۚ لَهٗ مَا بَيْنَ اَيْدِيْنَا وَمَا خَلْفَنَا وَمَا بَيْنَ ذٰلِكَ ۚ وَمَا كَانَ رَبُّكَ نَسِيًّا ﴿٦٥﴾

६५. "तथा हामी (देवदूतहरू) तिम्रा प्रभुको आदेश बिना अवतीर्ण हुने गर्दैनौं । हाम्रा अगाडि र हाम्रा पछाडि तथा ती दुवै दिशाका बीचमा रहेका सम्पूर्ण वस्तुहरू उनकै रहेका छन्; तथा तिम्रा प्रतिपालक स्मरणहीन छैनन् ।"

رَبُّ السَّمٰوٰتِ وَالْاَرْضِ وَمَا بَيْنَهُمَا فَاعْبُدْهُ وَاصْطَبِرْ لِعِبَادَتِهٖ ؕ هَلْ تَعْلَمُ لَهٗ سَمِيًّا ﴿٦٥﴾

६६. उनी आकाशमण्डल र पृथ्वी तथा ती दुबैका बीचमा रहेका सम्पूर्ण वस्तुहरूका पनि प्रतिपालक हुन् । त्यसकारण उनकै उपासना गर तथा उनको उपासनामा स्थिर रहने गर । के तिमीलाई उनीतुल्य अन्य कोहीबारे थाहा छ?

وَيَقُوْلُ الْاِنْسَانُ ءَاِذَا مَا مِتُّ لَسَوْفَ اُخْرَجُ حَيًّا ﴿٦٦﴾

६७. तथा मानिस भन्ने गर्छ, "के जब म मर्नेछु, तब मलाई जीवित पारी उठाइनेछ त?"!

اَوَلَا يَذْكُرُ الْاِنْسَانُ اَنَّا خَلَقْنٰهُ مِنْ قَبْلُ وَلَمْ يَكُ شَيْـًٔا ﴿٦٧﴾

६८. के मानिसलाई यस अघि हामीले उसलाई त्यस अवस्थामा सृष्टि गरेका थियौं, जब उसको कुनै अस्तित्त्व नै थिएन भन्ने कुरा थाहा छैन र?

فَوَرَبِّكَ لَنَحْشُرَنَّهُمْ وَالشَّيٰطِيْنَ ثُمَّ لَنُحْضِرَنَّهُمْ حَوْلَ جَهَنَّمَ جِثِيًّا ﴿٦٨﴾

६९. तथा, तिम्रा प्रतिपालकको कसम, हामी अवश्यरूपमा तिनीहरू सबैलाई र सैतानहरूलाई (पनि) एकत्रित गर्नेछौं; त्यसपछि हामी तिनीहरूलाई घुँडा टेकाएर नर्कका छेउमा पुऱ्याउने छौं ।

ثُمَّ لَنَنْزِعَنَّ مِنْ كُلِّ شِيْعَةٍ اَيُّهُمْ اَشَدُّ عَلَى الرَّحْمٰنِ عِتِيًّا ﴿٦٩﴾

७०. त्यसपछि हामी हरेक समूहबाट तिनीहरूमध्ये परम कृपालु (प्रतिपालक)का कट्टर विद्रोही रहेका व्यक्तिहरूलाई अवश्य तानेर निकाल्ने छौं ।

ثُمَّ لَنَحْنُ اَعْلَمُ بِالَّذِيْنَ هُمْ اَوْلٰى بِهَا صِلِيًّا ﴿٧٠﴾

७१. तथा निश्चय नै तिनीहरूमध्ये त्यसमा अधिक जल्नयोग्य को रहेछ भन्ने कुरा हामी सर्वाधिक जान्दछौं ।

وَاِنْ مِّنْكُمْ اِلَّا وَارِدُهَا ۚ كَانَ عَلٰى رَبِّكَ حَتْمًا مَّقْضِيًّا ﴿٧١﴾

७२. तथा तिमीहरूमध्ये त्यसमा प्रवेश नगर्ने कोही हुनेछैन । यो तिम्रा प्रतिपालकको अटल निर्णय रहेको छ ।

ثُمَّ نُنَجِّى الَّذِيْنَ اتَّقَوْا وَّنَذَرُ الظّٰلِمِيْنَ فِيْهَا جِثِيًّا ﴿٧٢﴾

७३. त्यसपछि धर्मनिष्ठ व्यक्तिहरूलाई हामी बचाउने छौं र अत्याचारी व्यक्तिहरूलाई भने त्यसेमा घुँडा टेकेका

अवस्थामा छाडिदिनेछौं ।

७४. तथा जब तिनीहरूसमक्ष हाम्रा स्पष्ट निर्देशनहरूको पाठ गरिन्छ, (तब) अविश्वासी व्यक्तिहरू विश्वासीजनसित भन्छन्, "यी दुई समूहमध्ये कुन समूहचाँहि दर्जामा उच्च छ र कसको सभा बढी प्रभावशाली रहेको छ?"

وَإِذَا تُتْلَىٰ عَلَيْهِمْ آيَاتُنَا بَيِّنَاتٍ قَالَ الَّذِينَ كَفَرُوا لِلَّذِينَ آمَنُوا أَيُّ الْفَرِيقَيْنِ خَيْرٌ مَّقَامًا وَأَحْسَنُ نَدِيًّا ﴿٧٣﴾

७५. तथा तिनीहरूभन्दा पहिला यस्ता कति पुस्ताहरूलाई हामीले नाश गरेका छौं, जुन यिनीहरूभन्दा अधिक धनसम्पन्न र वाह्य रूपमा अधिक प्रदर्शनयोग्य थिए ।

وَكَمْ أَهْلَكْنَا قَبْلَهُم مِّن قَرْنٍ هُمْ أَحْسَنُ أَثَاثًا وَرِئْيًا ﴿٧٤﴾

७६. तिमी भन, "पथभ्रष्ट भएका व्यक्तिहरूलाई कृपालु (प्रतिपालक)ले केही लामो समयका लागि अवसर प्रदान गर्छन् अत: जब तिनीहरूले आफूलाई सावधान गरिएको कुरा देख्छन्– चाहे त्यो दण्ड होस् अथवा अन्तिम घडी (त्यससमय) तिनीहरूले कोचाहिँ प्रतिष्ठामा निकृष्ट र को साथी-संगीहरूको आधारमा दुर्बल रहेको छ भन्ने कुरालाई राम्ररी बुझ्नेछन् ।

قُلْ مَن كَانَ فِي الضَّلَالَةِ فَلْيَمْدُدْ لَهُ الرَّحْمَٰنُ مَدًّا ۚ حَتَّىٰ إِذَا رَأَوْا مَا يُوعَدُونَ إِمَّا الْعَذَابَ وَإِمَّا السَّاعَةَ فَسَيَعْلَمُونَ مَنْ هُوَ شَرٌّ مَّكَانًا وَأَضْعَفُ جُندًا ﴿٧٥﴾

७७. "तथा मार्गदर्शनको अनुसरण गर्ने व्यक्तिहरूलाई अल्लाहले सन्मार्गमा उन्नति प्रदान गर्छन् । तथा चिरकाल रहने पुण्यकार्यहरू प्रतिफलस्वरूप र परिणामस्वरूप पनि तिम्रा प्रतिपालकका दृष्टिमा सर्वोत्कृष्ट ठहर्छन् ।"

وَيَزِيدُ اللَّهُ الَّذِينَ اهْتَدَوْا هُدًى ۗ وَالْبَاقِيَاتُ الصَّالِحَاتُ خَيْرٌ عِندَ رَبِّكَ ثَوَابًا وَخَيْرٌ مَّرَدًّا ﴿٧٦﴾

७८. "मलाई अवश्यरूपमा सम्पत्ति र सन्तान प्रदान गरिनेछ" भनी जसले भन्छ र जसले हाम्रा चिह्नहरूलाई अस्वीकार गर्छ, के त्यसको अवस्थाप्रति तिमीले ध्यान दिएका छैनौ र?"

أَفَرَأَيْتَ الَّذِي كَفَرَ بِآيَاتِنَا وَقَالَ لَأُوتَيَنَّ مَالًا وَوَلَدًا ﴿٧٧﴾

७९. के त्यो व्यक्ति अदृश्य (कुराहरू)को

أَطَّلَعَ الْغَيْبَ أَمِ اتَّخَذَ عِندَ الرَّحْمَٰنِ عَهْدًا ﴿٧٨﴾

ज्ञाता भएको छ अथवा के त्यसले परम कृपालु (प्रतिपालक)बाट कुनै वचन लिएको छ त?

كَلَّا ، سَنَكْتُبُ مَا يَقُوْلُ وَ نَمُدُّ لَهٗ مِنَ الْعَذَابِ مَدًّا ﴿٧٩﴾

८०. त्यस्तो केही होइन ! उसले भनेको कुरोलाई हामी लेखेर (सुरक्षित) राख्नेछौं तथा उसका निम्ति दण्डलाई अत्याधिक लम्ब्याउनेछौं ।

وَّ نَرِثُهٗ مَا يَقُوْلُ وَ يَاْتِيْنَا فَرْدًا ﴿٨٠﴾

८१. तथा जुन वस्तुहरूको उसले कुरा गर्छ ती सबै वस्तुका हामी नै वारिस बन्नेछौं, तथा उ नितान्त एक्लै हामीसमक्ष आउनेछ ।

وَ اتَّخَذُوْا مِنْ دُوْنِ اللّٰهِ اٰلِهَةً لِّيَكُوْنُوْا لَهُمْ عِزًّا ﴿٨١﴾

८२. तथा तिनीहरूले अल्लाहलाई छाडी (अन्यान्य) उपास्यहरू गढेका छन्, ताकि तिनीहरू ती व्यक्तिहरूका निम्ति शक्ति(का स्रोत) बनून् ।

كَلَّا ، سَيَكْفُرُوْنَ بِعِبَادَتِهِمْ وَ يَكُوْنُوْنَ عَلَيْهِمْ ضِدًّا ﴿٨٢﴾

८३. त्यो कदापि हुन सक्दैन ! तिनीहरूले ती व्यक्तिहरूले गरेको उपासनालाई अस्वीकार गर्नेछन्, तथा तिनीहरू उनीहरूका विरोधी बन्नेछन् ।

اَلَمْ تَرَ اَنَّاۤ اَرْسَلْنَا الشَّيٰطِيْنَ عَلَى الْكٰفِرِيْنَ تَؤُزُّهُمْ اَزًّا ﴿٨٣﴾

८४. हामीले अविश्वासीहरूलाई अवज्ञापूर्ण कार्यप्रति) प्रेरित गर्नका निम्ति सैतानहरूलाई पठाएका छौं भन्ने कुरा तिमीलाई थाहा छैन र?

فَلَا تَعْجَلْ عَلَيْهِمْ ، اِنَّمَا نَعُدُّ لَهُمْ عَدًّا ﴿٨٤﴾

८५. अतः तिनीहरूका सम्बन्धमा हत्तार नगर; हामी तिनीहरूका -कार्यहरूको) पूर्ण लेखाजोखा लिइरहेछौं ।

يَوْمَ نَحْشُرُ الْمُتَّقِيْنَ اِلَى الرَّحْمٰنِ وَفْدًا ﴿٨٥﴾

८६. त्यस दिन(को स्मरण गर) जब हामी धर्मनिष्ठ व्यक्तिहरूलाई (आदरणीय) अतिथिस्वरूप परम कृपालु प्रतिपालकका सामुन्ने एकत्रित गर्नेछौं ।

وَّ نَسُوْقُ الْمُجْرِمِيْنَ اِلٰى جَهَنَّمَ وِرْدًا ﴿٨٦﴾

८७. तथा अपराधीहरूलाई हामी बथानलाई पानीको घाटतर्फ लगेझैं नर्कतर्फ हाँकेर

लैजानेछौं ।

८८. जसले परम कृपालु -अल्लाह)बाट वचन लिएको छ त्यस व्यक्तिलाई बाहेक अन्य कसैलाई मध्यस्थता गर्ने अधिकार मिल्नेछैन ।

لَا يَمْلِكُونَ الشَّفَاعَةَ إِلَّا مَنِ اتَّخَذَ عِنْدَ الرَّحْمٰنِ عَهْدًا ﴿٨٧﴾

८९. तथा तिनीहरू भन्छन्, "परम कृपालु (प्रतिपालक)ले स्वयम्का निम्ति एउटा पुत्र ग्रहण गरेका छन् ।"

وَقَالُوا اتَّخَذَ الرَّحْمٰنُ وَلَدًا ﴿٨٨﴾

९०. निश्चयपूर्वक, तिमीहरूले एउटा भयानक कुरा गरेका छौ ।

لَقَدْ جِئْتُمْ شَيْئًا إِدًّا ﴿٨٩﴾

९१. त्यसले गर्दा सम्भवत: आकाशमण्डलको विस्फोटन हुन सक्छ, र धर्ती टुक्रा-टुक्रा हुनसक्छ, तथा पर्वतहरू खण्ड-विखण्ड भएर ढल्न सक्छन्,

تَكَادُ السَّمٰوٰتُ يَتَفَطَّرْنَ مِنْهُ وَتَنْشَقُّ الْأَرْضُ وَتَخِرُّ الْجِبَالُ هَدًّا ﴿٩٠﴾

९२. किनभने तिनीहरूले कृपालु (प्रतिपालक)का निम्ति एउटा पुत्र ठहर गरेका छन् ।

أَنْ دَعَوْا لِلرَّحْمٰنِ وَلَدًا ﴿٩١﴾

९३. स्वयम्का निम्ति पुत्र ग्रहण गर्नु कृपालु (प्रतिपालक)को मर्यादायोग्य कुरो होइन ।

وَمَا يَنْبَغِي لِلرَّحْمٰنِ أَنْ يَتَّخِذَ وَلَدًا ﴿٩٢﴾

९४. (किनभने) आकाशमण्डल र पृथ्वीमा रहेको हरेक -व्यक्ति) कृपालु अल्लाह समक्ष बंधुवा दासस्वरूप उपस्थित हुनेछ ।

إِنْ كُلُّ مَنْ فِي السَّمٰوٰتِ وَالْأَرْضِ إِلَّا آتِي الرَّحْمٰنِ عَبْدًا ﴿٩٣﴾

९५. वस्तुत: उनले तिनीहरूलाई (आफ्नो ज्ञानले) बुझेका छन् तथा तिनीहरू सबैको पूर्ण गणना राखेका छन् ।

لَقَدْ أَحْصٰهُمْ وَعَدَّهُمْ عَدًّا ﴿٩٤﴾

९६. तथा पुनरुत्थानका दिन तिनीहरूमध्ये हरेक एक्ला-एक्लै उनीसमक्ष उपस्थित हुनेछन्

وَكُلُّهُمْ آتِيهِ يَوْمَ الْقِيٰمَةِ فَرْدًا ﴿٩٥﴾

إِنَّ ٱلَّذِينَ ءَامَنُوا۟ وَعَمِلُوا۟ ٱلصَّٰلِحَٰتِ سَيَجْعَلُ لَهُمُ ٱلرَّحْمَٰنُ وُدًّا ﴿٩٦﴾

९७. ती व्यक्तिहरू जसले विश्वास गर्छन् र पुण्यकार्य गर्छन्– तिनीहरूका (हृदयमा) कृपालु -अल्लाह)ले प्रेम सृष्टि गर्नेछन् ।

فَإِنَّمَا يَسَّرْنَٰهُ بِلِسَانِكَ لِتُبَشِّرَ بِهِ ٱلْمُتَّقِينَ وَتُنذِرَ بِهِۦ قَوْمًا لُّدًّا ﴿٩٧﴾

९८. अतः यस (कुरान)लाई हामीले तिम्रो जिब्रोमा सरल तुल्याएका छौं ताकि त्यसद्वारा तिमी धर्मनिष्ठ व्यक्तिहरूलाई शुभसन्देश देऊ, तथा त्यसद्वारा विवाद सिर्जना गर्ने मानिसहरूलाई सावधान गर ।

وَكَمْ أَهْلَكْنَا قَبْلَهُم مِّن قَرْنٍ هَلْ تُحِسُّ مِنْهُم مِّنْ أَحَدٍ أَوْ تَسْمَعُ لَهُمْ رِكْزًۢا ﴿٩٨﴾

९९. तथा तिनीहरूभन्दा पहिला कति नै पुस्तहरूलाई हामीले विनाश गरिसकेका छौं ! के तिनीहरूमध्ये कुनै एकलाई तिमी देख्न सक्छौ, अथवा तिनीहरूको कुनै कानेखुसी (मात्र) पनि सुन्न सक्छौ?

سُوْرَةُ طٰهٰ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ مِائَةٌ وَّسِتٌّ وَّثَلٰثُوْنَ اٰيَةً وَّثَمَانِيَةُ رُكُوْعَاتٍ

## ता हा
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

طٰهٰ ②

२. ता हा* ।

مَآ اَنْزَلْنَا عَلَيْكَ الْقُرْاٰنَ لِتَشْقٰٓى ③

३. तिमी कुनै विपत्तिमा पर भनी हामीले तिमीप्रति यो कुरन अवतीर्ण गरेका होइनौं,

اِلَّا تَذْكِرَةً لِّمَنْ يَّخْشٰى ④

४. परन्तु यो त -अल्लाहबाट) डराउने व्यक्तिका निम्ति एउटा उपदेशस्वरूप रहेको छ ।

تَنْزِيْلًا مِّمَّنْ خَلَقَ الْاَرْضَ وَالسَّمٰوٰتِ الْعُلٰى ⑤

५. (तथा) यो पृथ्वी र उच्च आकाशमण्डलका सिर्जनहारका तर्फबाट भएको आकाशवाणी हो ।

اَلرَّحْمٰنُ عَلَى الْعَرْشِ اسْتَوٰى ⑥

६. (उनी नै) ती कृपालु -अल्लाह) हुन् जस)ले स्वयम्लाई सिंहासनमा स्थापित गरेका छन् ।

لَهٗ مَا فِى السَّمٰوٰتِ وَمَا فِى الْاَرْضِ وَمَا بَيْنَهُمَا وَمَا تَحْتَ الثَّرٰى ⑦

७. आकाशमण्डलमा रहेका सम्पूर्ण वस्तुहरू र पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरू तथा ती दुबै स्थलका बीचमा रहेका सम्पूर्ण वस्तुहरू तथा गिलो माटोमनि रहेका सम्पर्ण वस्तुहरू उनकै रहेका छन् ।

وَاِنْ تَجْهَرْ بِالْقَوْلِ فَاِنَّهٗ يَعْلَمُ السِّرَّ وَاَخْفٰى ⑧

८. तथा यदि तिमीले उच्च स्वरमा बोलेमा (केही अन्तर पर्ने छैन), किनभने उनले गुप्त (भावना) तथा (त्यो भन्दा पनि) अधिक गुप्त रहेका कुरालाई जान्दछन् ।

---

* ए सर्वगुण सम्पन्न पुरुष!

ٱللَّهُ لَآ إِلَٰهَ إِلَّا هُوَ ۖ لَهُ ٱلْأَسْمَآءُ ٱلْحُسْنَىٰ ﴿٨﴾

९. अल्लाह- उनीबाहेक अन्य कोही उपास्य छैन । सम्पूर्ण उत्तम नाम (गुण) हरू उनकै हुन् ।

وَهَلْ أَتَىٰكَ حَدِيثُ مُوسَىٰٓ ﴿٩﴾

१०. तथा के तिमीसमक्ष मूसाको घटना (विवरण) आएको छ?

إِذْ رَءَا نَارًا فَقَالَ لِأَهْلِهِ ٱمْكُثُوٓا۟ إِنِّىٓ ءَانَسْتُ نَارًا لَّعَلِّىٓ ءَاتِيكُم مِّنْهَا بِقَبَسٍ أَوْ أَجِدُ عَلَى ٱلنَّارِ هُدًى ﴿١٠﴾

११. जब उनले एउटा अग्नि देखे, उनले आफ्ना परिवारलाई भने, "एकछिन पर्ख, मैले एउटा अग्नि देखेको छु; सम्भव छ, तिमीहरूका निम्ति म त्यहाँबाट एउटा कोइलो ल्याउन सकूँ अथवा अग्निमा (कुनै) मार्ग प्राप्त गर्न सकूँ ।"

فَلَمَّآ أَتَىٰهَا نُودِىَ يَٰمُوسَىٰٓ ﴿١١﴾

१२. तथा जब उनी त्यहाँ आइपुगे, "ऐ मूसा, भन्ने घोषणा भयो ।

إِنِّىٓ أَنَا۠ رَبُّكَ فَٱخْلَعْ نَعْلَيْكَ ۖ إِنَّكَ بِٱلْوَادِ ٱلْمُقَدَّسِ طُوًى ﴿١٢﴾

१३. वस्तुत: म तिम्रो प्रतिपालक हुँ । अत: आफ्ना जुत्ता उतार; किनभने तिमी पवित्र "तुवा" उपत्यकामा छौ ।

وَأَنَا ٱخْتَرْتُكَ فَٱسْتَمِعْ لِمَا يُوحَىٰٓ ﴿١٣﴾

१४. "तथा मैले तिमीलाई चुनेको छु; अत: जुनकुरा अवतीर्ण गरिन्छ त्यसलाई (ध्यानपूर्वक) सुन ।

إِنَّنِىٓ أَنَا ٱللَّهُ لَآ إِلَٰهَ إِلَّآ أَنَا۠ فَٱعْبُدْنِى وَأَقِمِ ٱلصَّلَوٰةَ لِذِكْرِىٓ ﴿١٤﴾

१५. "वस्तुत: म अल्लाह हुँ म बाहेक अन्य कोही उपास्य छैन । त्यसकारण मेरो उपसना गर, तथा मलाई स्मरण गर्नका निम्ति नमाज अनुष्ठान गर ।

إِنَّ ٱلسَّاعَةَ ءَاتِيَةٌ أَكَادُ أُخْفِيهَا لِتُجْزَىٰ كُلُّ نَفْسٍۭ بِمَا تَسْعَىٰ ﴿١٥﴾

१६. "निश्चय नै, निर्धारित घडीको आगमन हुनेछ; म त्यसलाई प्रकट गर्न लागिरहेछु, ताकि हरेक अत्मालाई उसको कमाइको फल प्रदान गरियोस् ।

فَلَا يَصُدَّنَّكَ عَنْهَا مَن لَّا يُؤْمِنُ بِهَا وَٱتَّبَعَ هَوَىٰهُ فَتَرْدَىٰ ﴿١٦﴾

१७. "त्यसकारण जसले त्यसप्रति विश्वास गर्दैन र आफ्ना कुवाञ्छनाहरूका पछि लाग्छ, त्यसले तिमीलाई त्यसबाट विमुख

नतुल्याओस्, नत्र तिम्रो विनाश हुनेछ ।

وَمَا تِلْكَ بِيَمِينِكَ يٰمُوسٰى ﴿١٨﴾

१८. "तथा ऐ मूसा, तिम्रो दाहिने हातमा त्यो के वस्तु हो?"

قَالَ هِيَ عَصَايَ ۚ أَتَوَكَّؤُا عَلَيْهَا وَأَهُشُّ بِهَا عَلٰى غَنَمِي وَلِيَ فِيهَا مَآرِبُ أُخْرٰى ﴿١٩﴾

१९. उनले उत्तर दिए, "यो मेरो लौरो हो, म यसमाथि अडेस लगाउछु, तथा त्यसद्वारा आफ्ना भेडाहरूका निम्ति बृक्षबाट पात झार्ने गर्छु र यसबाहेक (पनि) मेरा अयान्य (कार्यहरू)मा यसको प्रयोग हुने गर्छ ।"

قَالَ أَلْقِهَا يٰمُوسٰى ﴿٢٠﴾

२०. उनले भने, "ऐ मूसा, त्यसलाई तल फ्याँक ।"

فَأَلْقٰهَا فَإِذَا هِيَ حَيَّةٌ تَسْعٰى ﴿٢١﴾

२१. अतः उनले त्यसलाई तल फ्याँकि दिए, तथा लौ हेर ! त्यो त एउटा दुगुर्दै गरेको सर्प हुनपुग्यो ।

قَالَ خُذْهَا وَلَا تَخَفْ ٭ سَنُعِيدُهَا سِيرَتَهَا الْأُولٰى ﴿٢٢﴾

२२. अल्लाहले भने, "त्यसलाई समात तथा नडराउ । हामी त्यसलाई त्यसको पहिलाको अवस्थामै फर्काउने छौं ।

وَاضْمُمْ يَدَكَ إِلٰى جَنَاحِكَ تَخْرُجْ بَيْضَاءَ مِنْ غَيْرِ سُوٓءٍ آيَةً أُخْرٰى ﴿٢٣﴾

२३. "तथा आफ्नो हातलाई तिमी आफ्नो काखीमनि च्याप । त्यो सेतो भएर निस्कने छ, कुनै प्रकारको बिमारी बिना नै- एउटा अर्को चिह्नस्वरूप,

لِنُرِيَكَ مِنْ آيٰتِنَا الْكُبْرٰى ﴿٢٤﴾

२४. "ताकि तिमीलाई हामी आफ्ना केही ठूला ठूला चिह्नहरू देखाउँ ।

اِذْهَبْ إِلٰى فِرْعَوْنَ إِنَّهُ طَغٰى ﴿٢٥﴾

२५. "तिमी फिरौनतर्फ जाउ; उसले (सबै) सीमाहरूको उल्लङ्घन गरिसकेको छ ।"

قَالَ رَبِّ اشْرَحْ لِي صَدْرِي ﴿٢٦﴾

२६. उनले भने, "हे मेरा प्रतिपालक, मेरा निम्ति मेरो अन्तः करणलाई खोलिदेउ,

وَيَسِّرْ لِي أَمْرِي ﴿٢٧﴾

२७. "तथा मेरा निम्ति मेरो मामिला सरल गरिदेउ,

وَاحْلُلْ عُقْدَةً مِّنْ لِّسَانِيْ ﴿٢٧﴾

२८. "तथा मेरो जिब्रोको गाँठो खोलिदेउ,

يَفْقَهُوْا قَوْلِيْ ﴿٢٨﴾

२९. "ताकि तिनीहरूले मेरो वक्तव्य बुझ्न सकून्,

وَاجْعَلْ لِّيْ وَزِيْرًا مِّنْ اَهْلِيْ ﴿٢٩﴾

३०. "मेरा परिवारबाट मलाई एकजना सहयोगी प्रदान गर ।

هٰرُوْنَ اَخِي ﴿٣٠﴾

३१. "हारुनलाई, जो मेरा भाई हुन्;

اشْدُدْ بِهٖٓ اَزْرِيْ ﴿٣١﴾

३२. उनीद्वारा मेरो शक्ति बढाउ,

وَاَشْرِكْهُ فِيْٓ اَمْرِيْ ﴿٣٢﴾

३३. "तथा मेरो कार्यमा उनीलाई सहभागी बनाउ,

كَيْ نُسَبِّحَكَ كَثِيْرًا ﴿٣٣﴾

३४. ताकि हामी अधिकभन्दा अधिक तिम्रो गुणगान गर्न सकौं,

وَّنَذْكُرَكَ كَثِيْرًا ﴿٣٤﴾

३५. तथा तिमीलाई अत्याधिक स्मरण गर्न सकौं ।

اِنَّكَ كُنْتَ بِنَا بَصِيْرًا ﴿٣٥﴾

३६. तिमीलाई हाम्रो पूर्ण ज्ञान प्राप्त छ ।"

قَالَ قَدْ اُوْتِيْتَ سُؤْلَكَ يٰمُوْسٰى ﴿٣٦﴾

३७. (अल्लाहले) भने, "ऐ मूसा, तिम्रो प्रार्थना स्वीकार गरियो !

وَلَقَدْ مَنَنَّا عَلَيْكَ مَرَّةً اُخْرٰٓى ﴿٣٧﴾

३८. तथा पहिला -पनि) एकपटक तिमीमाथि हामीले अनुग्रह गरेका थियौं,

اِذْ اَوْحَيْنَآ اِلٰٓى اُمِّكَ مَا يُوْحٰٓى ﴿٣٨﴾

३९. जब हामीले तिम्री माताप्रति (के भन्दै) एउटा (महत्त्वपूर्ण) आकाशवाणी गरेका थियौ (भने),

اَنِ اقْذِفِيْهِ فِي التَّابُوْتِ فَاقْذِفِيْهِ فِي الْيَمِّ فَلْيُلْقِهِ الْيَمُّ بِالسَّاحِلِ يَاْخُذْهُ عَدُوٌّ لِّيْ وَعَدُوٌّ لَّهٗ ۭ وَاَلْقَيْتُ عَلَيْكَ مَحَبَّةً مِّنِّيْ ڬ وَلِتُصْنَعَ عَلٰي عَيْنِيْ ﴿٣٩﴾

४०. "उसलाई एउटा सन्दुकमा राखेर नदीमा हालिदेउ, त्यसपछि नदीले त्यसलाई किनारसम्म पुऱ्याउने छ, (तथा एउटा त्यो व्यक्ति जो) मेरो शत्रु तथा उसको पनि शत्रु रहेको छ, त्यसले उसलाई (मूसालाई) उठाउने छ ।" तथा तिमीलाई मैले आफ्नो

प्रेमले बाँधें; तथा तिम्रो पालन-पोषण मेरा दृष्टिका सामुन्ने होस् (भनी मैले त्यसो गरेको थिएँ)।

إِذْ تَمْشِيٓ أُخْتُكَ فَتَقُولُ هَلْ أَدُلُّكُمْ عَلَىٰ مَن يَكْفُلُهُۥ ۖ فَرَجَعْنَٰكَ إِلَىٰٓ أُمِّكَ كَيْ تَقَرَّ عَيْنُهَا وَلَا تَحْزَنَ ۚ وَقَتَلْتَ نَفْسًا فَنَجَّيْنَٰكَ مِنَ ٱلْغَمِّ وَفَتَنَّٰكَ فُتُونًا ۚ فَلَبِثْتَ سِنِينَ فِيٓ أَهْلِ مَدْيَنَ ثُمَّ جِئْتَ عَلَىٰ قَدَرٍ يَٰمُوسَىٰ ﴿٤١﴾

४१. तब तिम्री दिदी त्यता हिड्दै थिइन् तथा तिनले भनिन्, "के म तिमीहरूलाई त्यसको जानकारी दिउँ जसले यसलाई पाल्नेछ?"अतः हामीले तिमीलाई फर्काएर तिम्री माताकहाँ पुऱ्यायौं ताकि तिनका नेत्रहरूलाई शीतलता प्राप्त होस् र तिनी चिन्ताग्रस्त नहुन् । तथा तिमीले एउटा मानिसको हत्या गरेका थियौ, परन्तु हामीले तिमीलाई त्यस चिन्ताबाट मुक्ति प्रदान गऱ्यौं । त्यस पछिविभिन्न तरिकाले तिमीलाई हामीले जाँच्यौं । तथा मिद्यानका मानिसहरूसित तिमीले केही वर्ष बितायौ । त्यसपछि ए मूसा, तिमी योग्यतापूर्ण उमेरमा पुग्यौ ।

وَٱصْطَنَعْتُكَ لِنَفْسِي ﴿٤٢﴾

४२. "तथा मैले तिमीलाई मेरा निम्ति छानें

ٱذْهَبْ أَنتَ وَأَخُوكَ بِـَٔايَٰتِي وَلَا تَنِيَا فِي ذِكْرِي ﴿٤٣﴾

४३. तिमी र तिम्रा भाइ मेरा चिह्नहरूका साथ प्रस्थान गर, तथा मेरो स्मरण गर्ने कार्यमा सुस्त्याइँ नगर ।

ٱذْهَبَآ إِلَىٰ فِرْعَوْنَ إِنَّهُۥ طَغَىٰ ﴿٤٤﴾

४४. तिमीहरू दुबै फिरौनसमक्ष जाऊ, किनभने उसले (सबै) सीमाहरूको उल्लङ्घन गरेको छ ।

فَقُولَا لَهُۥ قَوْلًا لَّيِّنًا لَّعَلَّهُۥ يَتَذَكَّرُ أَوْ يَخْشَىٰ ﴿٤٥﴾

४५. "तथा उसलाई तिमीहरू दुबैले कोमलतापूर्ण शब्दहरूद्वारा सम्बोधन गर त्यसप्रकार सम्भवतः उसले अर्ती लिनेछ अथवा डर धारण गर्नेछ ।"

قَالَا رَبَّنَآ إِنَّنَا نَخَافُ أَن يَفْرُطَ عَلَيْنَآ أَوْ أَن يَطْغَىٰ ﴿٤٦﴾

४६. तिनीहरूले भने, "हे हाम्रा प्रतिपालक, उसले हामीमाथि अत्याचार गर्ला अथवा (अत्यचारमा सबै) सीमाहरूको उल्लङ्घन गर्ला कि भनी हामी डराउँछौं ।"

४७. (अल्लाहले) भने, "तिमीहरू नडराऊ; किनभने म तिमीहरू दुबैसित छु । म (सबैकुरा) सुन्छु र म देख्छु ।"

قَالَ لَا تَخَافَآ اِنَّنِيْ مَعَكُمَآ اَسْمَعُ وَاَرٰى ﴿٤٦﴾

४८. "अतः तिमीहरू दुबै उसकहाँ जाऊ तथा भन, "हामी तिम्रा प्रतिपालकका तर्फबाट सन्देशवाहक हौं; त्यसकारण इजरायलका सन्तानलाई हामीसित जान देउ; तथा तिनीहरूलाई कष्ट नदेउ । हामी तिम्रा प्रतिपालकका तर्फबाट एउटा चिह्न लिएर आएका छौं; तथा जसले मार्गदर्शनको अनुसरण गर्छ उसमाथि शान्ति वर्षण हुनेछ;

فَاْتِيٰهُ فَقُوْلَآ اِنَّا رَسُوْلَا رَبِّكَ فَاَرْسِلْ مَعَنَا بَنِيْٓ اِسْرَآءِيْلَ ۙ وَلَا تُعَذِّبْهُمْ ؕ قَدْ جِئْنٰكَ بِاٰيَةٍ مِّنْ رَّبِّكَ ؕ وَالسَّلٰمُ عَلٰى مَنِ اتَّبَعَ الْهُدٰى ﴿٤٧﴾

४९. "जसले अस्वीकार गर्छ र विमुख हुन्छ त्यसमाथि भने सजाय अवतीर्ण हुनेछ भनी हामीमाथि आकाशवाणी गरिएको छ ।"

اِنَّا قَدْ اُوْحِيَ اِلَيْنَآ اَنَّ الْعَذَابَ عَلٰى مَنْ كَذَّبَ وَتَوَلّٰى ﴿٤٨﴾

५०. (फिरौनले) भन्यो, "ऐ मूसा, त्यसोभए तिमीहरू दुबैको प्रतिपालक को हो त?"

قَالَ فَمَنْ رَّبُّكُمَا يٰمُوْسٰى ﴿٤٩﴾

५१. उनले भने, "जसले प्रत्येक वस्तुलाई उसको (प्रकृतिअनुसार) आकृति प्रदान गरेका छन् (र) त्यसपछि -त्यसलाई उसको यथोचित कार्यप्रणाली) सिकाएका छन् तिनी नै हाम्रा प्रतिपालक हुन् ।"

قَالَ رَبُّنَا الَّذِيْٓ اَعْطٰى كُلَّ شَيْءٍ خَلْقَهٗ ثُمَّ هَدٰى ﴿٥٠﴾

५२. फिरौनले भन्यो, "अतीतका पुस्ताका मानिसहरूको भाग्यका बारेमा त्यसोभए के निर्णय होला त?"

قَالَ فَمَا بَالُ الْقُرُوْنِ الْاُوْلٰى ﴿٥١﴾

५३. उनले भने, "तिनीहरूबारे मेरा प्रतिपालकलाई ज्ञान प्राप्त छ जुन एउटा पुस्तकमा (लिपिवद्ध रहेको) छ । मेरा प्रतिपालक न भ्रममा पर्छन् न त भुल्छन् नै ।"

قَالَ عِلْمُهَا عِنْدَ رَبِّيْ فِيْ كِتٰبٍ ۚ لَا يَضِلُّ رَبِّيْ وَلَا يَنْسَى ﴿٥٢﴾

५४. (ती उनै हुन्) जसले पृथ्वीलाई तिमीहरूका निम्ति विछ्यौनास्वरूप बनाएका छन् र तिमीहरूलाई हिड्नका निम्ति

الَّذِيْ جَعَلَ لَكُمُ الْاَرْضَ مَهْدًا وَّسَلَكَ لَكُمْ فِيْهَا سُبُلًا وَّاَنْزَلَ مِنَ السَّمَآءِ مَآءً ؕ فَاَخْرَجْنَا بِهٖٓ اَزْوَاجًا مِّنْ نَّبَاتٍ شَتّٰى ﴿٥٣﴾

मार्गहरू निकालेका छन्; तथा उनले आकाशबाट पानी बर्साउछन्, तथा त्यसद्वारा हामी विभिन्न प्रकारका वनस्पतिहरू उब्जाउँछौं ।

كُلُوْا وَارْعَوْا اَنْعَامَكُمْ ؕ اِنَّ فِيْ ذٰلِكَ لَاٰيٰتٍ لِّاُولِي النُّهٰى ﴿٥٤﴾

५५. तिमीहरू (पनि) खाऊ तथा आफ्ना चौपायाहरूलाई चराऊ । वस्तुतः बुद्धिमान व्यक्तिहरूका निम्ति यसमा चिह्नहरू रहेका छन् ।

مِنْهَا خَلَقْنٰكُمْ وَفِيْهَا نُعِيْدُكُمْ وَمِنْهَا نُخْرِجُكُمْ تَارَةً اُخْرٰى ﴿٥٥﴾

५६. यसै (पृथ्वी)बाट हामीले तिमीहरूलाई सृष्टि गरेका हौं, तथा यसैतर्फ तिमीहरूलाई हामी फर्काउने छौं, तथा यसैबाट हामी तिमीहरूको दोस्रोपटक निकाल्नेछौं ।

وَلَقَدْ اَرَيْنٰهُ اٰيٰتِنَا كُلَّهَا فَكَذَّبَ وَاَبٰى ﴿٥٦﴾

५७. तथा हामीले उस(फिरौन)लाई हाम्रा सबै प्रकारका चिह्नहरू देखायौं;, परन्तु उसले -तिनीहरूलाई) अस्वीकार गऱ्यो तथा (विश्वास गर्न) इन्कार गऱ्यो ।

قَالَ اَجِئْتَنَا لِتُخْرِجَنَا مِنْ اَرْضِنَا بِسِحْرِكَ يٰمُوْسٰى ﴿٥٧﴾

५८. उसले भन्यो, “ऐ मूसा, के तिमी आफ्नो जादुद्वारा हामीलाई हाम्रो देशबाट निकाल्नका निम्ति हामीसमक्ष आएका हौ?

فَلَنَاْتِيَنَّكَ بِسِحْرٍ مِّثْلِهٖ فَاجْعَلْ بَيْنَنَا وَبَيْنَكَ مَوْعِدًا لَّا نُخْلِفُهٗ نَحْنُ وَلَآ اَنْتَ مَكَانًا سُوًى ﴿٥٨﴾

५९. “परन्तु हामी तिमीसमक्ष अवश्य त्यस्तै जादु प्रस्तुत गर्नेछौं; त्यसकारण हामी र तिमीबीच भेटका निम्ति एउटा यस्तो समय निर्धारण गर जसबाट न हामी पछि हट्ने छौं न त तिमी नै- एउटा यस्तो स्थानमा जुन (हामी र तिम्रा निम्ति) एकसमान (स्वीकार्य) होस् ।”

قَالَ مَوْعِدُكُمْ يَوْمُ الزِّيْنَةِ وَاَنْ يُّحْشَرَ النَّاسُ ضُحًى ﴿٥٩﴾

६०. मूसाले भने, “चाडका दिन तिमीहरूसित भेट्ने समय निर्धारित होस्, तथा सूर्योदयको केही समयपश्चात् मानिसहरूलाई उकत्रित गरियोस् ।”

فَتَوَلّٰى فِرْعَوْنُ فَجَمَعَ كَيْدَهٗ ثُمَّ اَتٰى ﴿٦٠﴾

६१. त्यसपछि फिरौन फर्क्यो तथा आफ्ना सम्पूर्ण येजनाहरू जम्मा गऱ्यो, त्यसपछि

त्यो निर्धारित भेला हुने स्थानमा आयो ।

قَالَ لَهُمْ مُّوْسٰى وَيْلَكُمْ لَا تَفْتَرُوْا عَلَى اللّٰهِ كَذِبًا فَيُسْحِتَكُمْ بِعَذَابٍ ۚ وَ قَدْ خَابَ مَنِ افْتَرٰى ﴿٦١﴾

६१. मूसाले तिनीहरूलाई भने, "तिमीहरूलाई धिक्कार छ; अल्लाहका विरुद्ध मिथ्या नगढ, अन्यथा उनले कुनै न कुनै दण्डद्वारा तिमीहरूलाई नष्ट गर्नेछन्; तथा जसले मिथ्या गढ्छ त्यो अवश्य नै नाश हुनेछ ।"

فَتَنَازَعُوْٓا اَمْرَهُمْ بَيْنَهُمْ وَ اَسَرُّوا النَّجْوٰى ﴿٦٢﴾

६२. त्यसपछि तिनीहरू आफ्ना मामिलासम्बन्धमा परस्पर विवाद गर्न र गुप्तरूपमा सल्लाह गर्न लागे ।

قَالُوْٓا اِنْ هٰذٰىنِ لَسٰحِرٰنِ يُرِيْدٰنِ اَنْ يُّخْرِجٰكُمْ مِّنْ اَرْضِكُمْ بِسِحْرِهِمَا وَيَذْهَبَا بِطَرِيْقَتِكُمُ الْمُثْلٰى ﴿٦٣﴾

६३. तिनीहरूले भने, "निश्चय नै यी दुइजना जादुगर हुन्, यिनीहरू आफ्नो जादुद्वारा तिमीहरूलाई तिमीहरूका देशबाट निकाल्न र तिमीहरूको उत्तम परम्परा (धर्म)लाई नष्ट गर्न चाहन्छन् ।

فَاَجْمِعُوْا كَيْدَكُمْ ثُمَّ ائْتُوْا صَفًّا ۚ وَقَدْ اَفْلَحَ الْيَوْمَ مَنِ اسْتَعْلٰى ﴿٦٤﴾

६४. "अतः तिमीहरू आफ्नो योजना तयार गर र कमवद्ध तरिकाले अघि आउ । तथ जसले आज जित्नेछ त्यही नै अवश्य कृतार्थ हुनेछ ।"

قَالُوْا يٰمُوْسٰٓى اِمَّآ اَنْ تُلْقِيَ وَاِمَّآ اَنْ نَّكُوْنَ اَوَّلَ مَنْ اَلْقٰى ﴿٦٥﴾

६५. तिनीहरूले भने, "ऐ मूसा, या त तिमी पहिला फ्याँक होइन भने हामी नै पहिला फ्याँक्नेछौं ।"

قَالَ بَلْ اَلْقُوْا ۚ فَاِذَا حِبَالُهُمْ وَعِصِيُّهُمْ يُخَيَّلُ اِلَيْهِ مِنْ سِحْرِهِمْ اَنَّهَا تَسْعٰى ﴿٦٦﴾

६६. उनले भने, "होइन, तिमीहरू नै फ्याँक ।" लौ हेर ! तिनीहरूको जादुका कारण तिनीहरूका डोरी र लट्ठीहरू उनका दृष्टिमा मानौं (यताउति) दगुर्न लागे ।

فَاَوْجَسَ فِيْ نَفْسِهٖ خِيْفَةً مُّوْسٰى ﴿٦٧﴾

६७. तथा मूसाले आफ्ना मनमा भयको अनुभव गरे ।

قُلْنَا لَا تَخَفْ اِنَّكَ اَنْتَ الْاَعْلٰى ﴿٦٨﴾

६८. हामीले भन्यौं, "तिमी नडराउ, किनभने तिमी नै विजयी हुनेछौ ।

وَأَلْقِ مَا فِي يَمِينِكَ تَلْقَفْ مَا صَنَعُوا ۚ إِنَّمَا صَنَعُوا كَيْدُ سٰحِرٍ ۚ وَلَا يُفْلِحُ السّٰحِرُ حَيْثُ أَتٰى ﴿٧٠﴾

७०. "तिमी आफ्नो दाहिने हातमा रहेको वस्तुलाई फ्याँक; त्यसले तिनीहरूले बनाएको वस्तुलाई निल्ने छ, जुनकुरा तिनीहरूले बनाए त्यो त केवल एउटा जादुको कौशल हो । तथा जुनसुकै मार्ग अपनाए पनि जादुगर कृतार्थ हुन सक्दैन ।"

فَأُلْقِيَ السَّحَرَةُ سُجَّدًا قَالُوا آمَنَّا بِرَبِّ هٰرُونَ وَمُوسٰى ﴿٧١﴾

७१. त्यसपछि ती जादुगरहरूलाई साष्टाङ्ग प्रणाम गर्न वाध्य गरियो । तिनीहरूले भने, "हामी हारुन र मूसाका प्रतिपालकप्रति विश्वास स्थापना गर्छौं ।"

قَالَ آمَنْتُمْ لَهُ قَبْلَ أَنْ آذَنَ لَكُمْ ۖ إِنَّهُ لَكَبِيرُكُمُ الَّذِي عَلَّمَكُمُ السِّحْرَ ۖ فَلَأُقَطِّعَنَّ أَيْدِيَكُمْ وَأَرْجُلَكُمْ مِنْ خِلَافٍ وَلَأُصَلِّبَنَّكُمْ فِي جُذُوعِ النَّخْلِ وَلَتَعْلَمُنَّ أَيُّنَا أَشَدُّ عَذَابًا وَأَبْقٰى ﴿٧٢﴾

७२. (फिरौनले) भन्यो, "के तिमीहरू मेरो अनुमति प्राप्त हुनुअघि नै उसप्रति विश्वास गर्छौ? त्यो जादु सिकाउने अवश्य तिमीहरूको मुखिया हो । त्यसकारण म अवश्य तिमीहरूका हात र खुट्टा विपरीत दिशाबाट पालैपालोसित काट्नेछु, तथा तिमीहरूलाई अवश्य म खजूरका हाँगामा शूली चढाउनेछु; तथा हामीमध्ये कोचाहिँ अधिक कठोर र दीर्घकालीन दण्ड दिनसक्छ भन्ने कुरा तिमीहरूले जान्नेछौ ।"

قَالُوا لَنْ نُؤْثِرَكَ عَلٰى مَا جَاءَنَا مِنَ الْبَيِّنٰتِ وَالَّذِي فَطَرَنَا فَاقْضِ مَا أَنْتَ قَاضٍ ۖ إِنَّمَا تَقْضِي هٰذِهِ الْحَيٰوةَ الدُّنْيَا ﴿٧٣﴾

७३. तिनीहरूले भने, "हामीसमक्ष आएका स्पष्ट चिह्नहरूमाथि हामी तिमीलाई प्राथमिकता दिनेछैनौं, न त (हामी तिमीलाई) तिनीमाथि (प्राथमिकता दिनेछौं) जसले हामीलाई सृष्टि गरे । अत: जे निर्णय गर्न चाहन्छौ गर; तिमी केवल यसै सांसारिक जीवनका सम्बन्धमा मात्र निर्णय गर्नसक्छौ ।

إِنَّا آمَنَّا بِرَبِّنَا لِيَغْفِرَ لَنَا خَطٰيٰنَا وَمَا أَكْرَهْتَنَا عَلَيْهِ مِنَ السِّحْرِ ۗ وَاللّٰهُ خَيْرٌ وَأَبْقٰى ﴿٧٤﴾

७४. "हामीले निश्चयपूर्वक आफ्ना प्रतिपालकप्रति विश्वास गरेका छौं ताकि उनले हामीलाई हाम्रा पापहरूप्रति क्षमाप्रदान गरुन तथा -हामीलाई) त्यस जादुप्रति (पनि क्षमा गरून्) जुन जादु (प्रयोग गर्न) प्रति तिमीले हामीलाई वाध्य

तुल्याएका थियौ तथा अल्लाह सर्वोत्तम चिरस्थायी रहेका छन् ।

إِنَّهُ مَن يَأْتِ رَبَّهُ مُجْرِمًا فَإِنَّ لَهُ جَهَنَّمَ لَا يَمُوتُ فِيهَا وَلَا يَحْيَىٰ ﴿٧٤﴾

७५. वस्तुतः जुन व्यक्ति अपराधी रहेको अवस्थामा उसका प्रभुसमक्ष उपस्थित हुन्छ- उसलाई नर्क प्राप्त हुन्छ; त्यहाँ त्यो व्यक्ति न त मर्नेछ न जीवित नै रहनेछ ।

وَمَن يَأْتِهِ مُؤْمِنًا قَدْ عَمِلَ الصَّالِحَاتِ فَأُولَٰئِكَ لَهُمُ الدَّرَجَاتُ الْعُلَىٰ ﴿٧٥﴾

७६. परन्तु जुन व्यक्ति पुण्यकार्य गर्दै विश्वासी रहेको अवस्थामा उनीसमक्ष उपस्थित हुन्छ, त्यस्ता व्यक्तिहरूलाई उच्चतम स्थान प्राप्त हुन्छ-

جَنَّاتُ عَدْنٍ تَجْرِي مِن تَحْتِهَا الْأَنْهَارُ خَالِدِينَ فِيهَا ۚ وَذَٰلِكَ جَزَاءُ مَن تَزَكَّىٰ ﴿٧٦﴾

७७. (यस्ता) चिरस्थायी बगैंचाहरू, जसमनि नहरहरू बग्ने गर्छन्; तिनीहरू त्यहाँ (सदासर्वदा) बसोबास गर्नेछन् । तथा त्यो ती व्यक्तिहरूको उचित प्रतिदान हो जसले आफूलाई पवित्र राख्ने गर्छन् ।

وَلَقَدْ أَوْحَيْنَا إِلَىٰ مُوسَىٰ أَنْ أَسْرِ بِعِبَادِي فَاضْرِبْ لَهُمْ طَرِيقًا فِي الْبَحْرِ يَبَسًا لَّا تَخَافُ دَرَكًا وَلَا تَخْشَىٰ ﴿٧٧﴾

७८. तथा निश्चय नै हामीले मूसाप्रति (के भन्दै) आकाशवाणी गरेका थियौं (भने), "मेरा भृत्यहरूलाई रात्रिसमयमा निकालेर लैजाउ, तथा समुद्रमा तिनीहरूका निम्ति एउटा सुक्खा मार्ग निकाल । कसैले उछिन्ला भनी तिमी डराउने छैनौ, न त तिमीलाई ( अन्य कुनै प्रकारको) डर हुनेछ ।

فَأَتْبَعَهُمْ فِرْعَوْنُ بِجُنُودِهِ فَغَشِيَهُم مِّنَ الْيَمِّ مَا غَشِيَهُمْ ﴿٧٨﴾

७९. त्यसपछि फिरौनले आफ्ना लस्करका साथ तिनीहरूलाई पछ्यायो, तथा समुद्रले तिनीहरूलाई पूर्णरूपले ढाक्यो ।

وَأَضَلَّ فِرْعَوْنُ قَوْمَهُ وَمَا هَدَىٰ ﴿٧٩﴾

८०. तथा फिरौनले आफ्ना मानिसहरूलाई पथभ्रष्ट तुल्यायो र तिनीहरूलाई सन्मार्ग देखाएन ।

يَا بَنِي إِسْرَائِيلَ قَدْ أَنجَيْنَاكُم مِّنْ عَدُوِّكُمْ وَوَاعَدْنَاكُمْ جَانِبَ الطُّورِ الْأَيْمَنَ وَنَزَّلْنَا عَلَيْكُمُ الْمَنَّ وَالسَّلْوَىٰ ﴿٨٠﴾

८१. "हे इजरायलका सन्तान हो, हामीले तिमीहरूलाई तिमीहरूका शत्रुबाट उद्धार गर्‍यौं, तथा हामीले (तूर) पर्वतका दाहिनेतर्फ तिमीहरूसित एउटा अङगीकार

गऱ्यौं तथा तिमीहरूप्रति हामीले मन्न र सल्वा अवतीर्ण गऱ्यौं ।

كُلُوا مِن طَيِّبَٰتِ مَا رَزَقْنَٰكُمْ وَلَا تَطْغَوْا فِيهِ فَيَحِلَّ عَلَيْكُمْ غَضَبِى ۖ وَمَن يَحْلِلْ عَلَيْهِ غَضَبِى فَقَدْ هَوَىٰ ﴿٨١﴾

८२. "हामीले तिमीहरूलाई प्रदान गरेका वस्तुहरूबाट उत्तम वस्तुहरू खाऊ, तथा त्यसमा सीमाउल्लङ्घन नगर, अन्यथा तिमीहरूमाथि मेरो प्रकोप अवतीर्ण हुनेछ; तथा जसमाथि मेरो प्रकोप अवतीर्ण हुन्छ त्यो व्यक्ति विनाश हुन पुग्नेछ ।

وَإِنِّى لَغَفَّارٌ لِّمَن تَابَ وَءَامَنَ وَعَمِلَ صَٰلِحًا ثُمَّ ٱهْتَدَىٰ ﴿٨٢﴾

८३. "परन्तु जसले प्रायश्चित गर्छन् र विश्वास स्थापना गरी पुण्यकार्य गर्छन् तथा त्यसपश्चात् सन्मार्गमा स्थिर रहन्छन् । तिनीहरूलाई म निश्चय नै क्षमादान गर्ने गर्छु ।

وَمَآ أَعْجَلَكَ عَن قَوْمِكَ يَٰمُوسَىٰ ﴿٨٣﴾

८४. "तथा ऐ मूसा, तिमी किन आफ्ना मानिसहरूलाई छाडी हत्तार गरेर आयौ?"

قَالَ هُمْ أُو۟لَآءِ عَلَىٰٓ أَثَرِى وَعَجِلْتُ إِلَيْكَ رَبِّ لِتَرْضَىٰ ﴿٨٤﴾

८५. उनले भने, "तिनीहरू मेरा पाइला पैलाउँदै हिंडिरहेछन् तथा हे मेरा प्रतिपालक, तिमी प्रसन्न हुनेछौ भनी म तिमीतर्फ शीघ्रतापूर्वक (आएको) हुँ ।"

قَالَ فَإِنَّا قَدْ فَتَنَّا قَوْمَكَ مِنۢ بَعْدِكَ وَأَضَلَّهُمُ ٱلسَّامِرِىُّ ﴿٨٥﴾

८६. (प्रतिपालकले) भने, "तिम्रो अनुपस्थितिमा हामीले तिम्रा मानिसहरूलाई जाँचेका छौं, तथा सामिरिले तिनीहरूलाई पथ भ्रष्ट तुल्याएको छ ।"

فَرَجَعَ مُوسَىٰٓ إِلَىٰ قَوْمِهِۦ غَضْبَٰنَ أَسِفًا ۚ قَالَ يَٰقَوْمِ أَلَمْ يَعِدْكُمْ رَبُّكُمْ وَعْدًا حَسَنًا ۚ أَفَطَالَ عَلَيْكُمُ ٱلْعَهْدُ أَمْ أَرَدتُّمْ أَن يَحِلَّ عَلَيْكُمْ غَضَبٌ مِّن رَّبِّكُمْ فَأَخْلَفْتُم مَّوْعِدِى ﴿٨٦﴾

८७. अतः मूसा क्रुद्ध र दुखित भइ आफ्ना मानिसहरूतर्फ फर्किए । उनले भने, "हे मेरा मानिसहरू हो, के तिमीहरूका प्रतिपालकले तिमीहरूसित एउटा उदारतापूर्ण कबुल गरेका थिएनन र? त्यसोभए के त्यस कबुलको निर्धारित समय तिमीहरूलाई अति लामो लाग्यो, अथवा के तिमीहरूका प्रभुको प्रकोप तिमीहरू माथि बर्सियोस् भन्ने तिमीहरूको चाहना थियो,

जसकारण तिमीहरूले मलाई दिएको (आफ्नो) वचन तोड्यौ?"

८८. तिनीहरूले भने, "हामीले तिमीसित बाँधेको वचन स्वेच्छाले तोडेका होइनौं; परन्तु हामीले जुन मानिसहरूका अलङ्कारको बोझ उठाएका थियौं । त्यसलाई फ्याँकिदियौं, तथा त्यसैगरी सामिरिले पनि फ्याँकिदियो ।"

قَالُوا مَآ أَخْلَفْنَا مَوْعِدَكَ بِمَلْكِنَا وَلَٰكِنَّا حُمِّلْنَآ أَوْزَارًا مِّن زِينَةِ الْقَوْمِ فَقَذَفْنَٰهَا فَكَذَٰلِكَ أَلْقَى السَّامِرِيُّ ﴿٨٧﴾

८९. त्यसपछि उसले तिनीहरूका निम्ति एउटा बाछो प्रस्तुत गऱ्यो केवल एउटा यस्तो शरीर जसले गाईको जस्तो एउटा निम्न ध्वनि निकालथ्यो । तथा (त्यसले र त्यसका साथीहरूले) भने, "यो तिमीहरूको र मूसाको उपास्य हो ।" परन्तु उसले (मूसाले यसबारे तिमीहरूसित उल्लेख गर्न) भुल्यो ।

فَأَخْرَجَ لَهُمْ عِجْلًا جَسَدًا لَّهُۥ خُوَارٌ فَقَالُوا هَٰذَآ إِلَٰهُكُمْ وَإِلَٰهُ مُوسَىٰ فَنَسِيَ ﴿٨٨﴾

९०. के त्यसले तिनीहरूको कुनै कुराको उत्तर दिदैनथ्यो, तथा त्यसमा तिनीहरूको न अमङ्गल गर्ने सामर्थ्य थियो न त मङ्गलसाधन गर्ने नै भन्ने कुरा तिनीहरूले देख्न सकेका थिएनन् र?

أَفَلَا يَرَوْنَ أَلَّا يَرْجِعُ إِلَيْهِمْ قَوْلًا وَلَا يَمْلِكُ لَهُمْ ضَرًّا وَلَا نَفْعًا ﴿٨٩﴾

९१. तथा त्यसअघि हारुनले तिनीहरूलाई भनेका थिए, "हे मेरा मानिसहरू हो, यस द्वारा केवल तिमीहरूको परीक्षा लिइएको छ । तथा परम कृपालु (प्रतिपालक) नै वास्तवमा तिमीहरूका प्रतिपालक हुन्; त्यसकारण मेरो अनुसरण गर तथा मेरो आदेश मान ।"

وَلَقَدْ قَالَ لَهُمْ هَٰرُونُ مِن قَبْلُ يَٰقَوْمِ إِنَّمَا فُتِنتُم بِهِۦ وَإِنَّ رَبَّكُمُ الرَّحْمَٰنُ فَاتَّبِعُونِي وَأَطِيعُوٓا أَمْرِي ﴿٩٠﴾

९२. निहरूले उत्तर दिए, "जवसम्म मूसा फर्किएर हामीसमक्ष आउने छैनन् तवसम्म हामी यसको उपासना गर्न छाड्नेछैनौं ।

قَالُوا لَن نَّبْرَحَ عَلَيْهِ عَٰكِفِينَ حَتَّىٰ يَرْجِعَ إِلَيْنَا مُوسَىٰ ﴿٩١﴾

९३. (मूसाले) भने, "हे हारुन्, जव तिमीले

قَالَ يَٰهَٰرُونُ مَا مَنَعَكَ إِذْ رَأَيْتَهُمْ ضَلُّوٓا ﴿٩٢﴾

तिनीहरूलाई पथभ्रष्ट भएको देखेका थियौ भने तिमीलाई कुन कुराले रोकेको थियो ।

اَلَّا تَتَّبِعَنِ ۭ اَفَعَصَيْتَ اَمْرِيْ ۝

९४. "मेरो अनुसरण गर्नबाट ? त्यसो भए के तिमीले मेरो आज्ञा उल्लङ्घन गर्‍यौ त?"

قَالَ يَبْنَؤُمَّ لَا تَاْخُذْ بِلِحْيَتِيْ وَلَا بِرَاْسِيْ ۚ اِنِّيْ خَشِيْتُ اَنْ تَقُوْلَ فَرَّقْتَ بَيْنَ بَنِيْٓ اِسْرَاۗءِيْلَ وَلَمْ تَرْقُبْ قَوْلِيْ ۝

९५. उनले उत्तर दिए, "हे मेरी माताका पुत्र, तिमी न मेरो दाह्री समातेर मलाई तान न त मेरो टाउको* (को कपाल) समातेर नै । "तिमीले इजरायलका सन्तानहरूका बीचमा विभेद सिर्जना गर्‍यौ र मेरो वचनको वास्ता गरेनौ" भनी तिमीले भनौला भन्ने मलाई आशङ्का थियो ।"

قَالَ فَمَا خَطْبُكَ يٰسَامِرِيُّ ۝

९६. (मूसाले) भने, "ऐ सामिरि, तिमीलाई केही भन्नु छ?"

قَالَ بَصُرْتُ بِمَا لَمْ يَبْصُرُوْا بِهٖ فَقَبَضْتُ قَبْضَةً مِّنْ اَثَرِ الرَّسُوْلِ فَنَبَذْتُهَا وَكَذٰلِكَ سَوَّلَتْ لِيْ نَفْسِيْ ۝

९७. उसले भन्यो, "मलाई त्यसकुराको ज्ञान थियो जसको ज्ञान तिनीहरूलाई थिएन । मैले सन्देशवाहकको मतबाट केही कुराहरू (मात्र) ग्रहण गरेको थिएँ, परन्तु ती कुराहरूलाई समेत मैले त्यागें । अतः यी कुराहरू मेरो मनले मलाई सिकाएको थियो ।"

قَالَ فَاذْهَبْ فَاِنَّ لَكَ فِي الْحَيٰوةِ اَنْ تَقُوْلَ لَا مِسَاسَ ۠ وَاِنَّ لَكَ مَوْعِدًا لَّنْ تُخْلَفَهٗ ۚ وَانْظُرْ اِلٰٓى اِلٰهِكَ الَّذِيْ ظَلْتَ عَلَيْهِ عَاكِفًا ۭ لَنُحَرِّقَنَّهٗ ثُمَّ لَنَنْسِفَنَّهٗ فِي الْيَمِّ نَسْفًا ۝

९८. मूसाले भने, "तिमी गइहाल । आफ्नो जीवनभरि "(मलाई) नछोएस्;" भन्दै हिड्नु नै तिम्रो निम्ति (दण्ड) हुनेछ, तथा तिम्रा निम्ति एउटा -दण्डको) प्रतिश्रुति रहेको छ जुन तिमीबाट कुनै प्रकारले टर्ने छैन । अब तिमी आफ्नो त्यस उपास्यतर्फ हेर जसका सामुन्ने बसेर तिमी सदा उपासना गर्ने गर्थ्यौ । हामी निश्चय नै त्यसलाई जलाउने छौं र त्यसपछि त्यसलाई समुद्रमा फ्याँक्ने

---

* "मलाई न दाह्री समातेर तान, न त मेरो टाउको (को कपाल) समातेर नै" भन्ने अभिव्यक्तिलाई शाब्दिक अर्थमा लिन मिल्दैन । यसको सरल अर्थ हो, "मलाई अपमानित नगर ।"

छौं ।"

९९. तिमीहरूका उपास्य ता केवल अल्लाह हुन्, उनीबाहेक अन्य कोही उपास्य छैन । उनले सम्पूर्ण वस्तुहरूलाई (आफ्नो) ज्ञानमा समेटेका छन् ।

إِنَّمَآ إِلَٰهُكُمُ ٱللَّهُ ٱلَّذِي لَآ إِلَٰهَ إِلَّا هُوَ ۚ وَسِعَ كُلَّ شَيْءٍ عِلْمًا ﴿٩٨﴾

१००. यसप्रकार हामी तिम्रा सामुन्ने पहिला घटेका घटनाहरूको विवरण प्रसतुत गर्ने गर्छौं । तथा हामीले तिमीलाई आफ्ना जुनाफबाट एउटा स्मारक ग्रन्थ (कुरान) प्रदान गरेकाछौं ।

كَذَٰلِكَ نَقُصُّ عَلَيْكَ مِنْ أَنۢبَآءِ مَا قَدْ سَبَقَ ۚ وَقَدْ ءَاتَيْنَٰكَ مِن لَّدُنَّا ذِكْرًا ﴿٩٩﴾

१०१. जुन व्यक्ति त्यसबाट विमुख हुन्छ, त्यसले पुनरुत्थानका दिन अवश्य (गह्रुँगो) भारी बोक्ने छ,

مَّنْ أَعْرَضَ عَنْهُ فَإِنَّهُۥ يَحْمِلُ يَوْمَ ٱلْقِيَٰمَةِ وِزْرًا ﴿١٠٠﴾

१०२. त्यस्ता व्यक्तिहरू (दीर्घकालसम्म) त्यस (अवस्था) मा रहनेछन्; तथा पुनरुत्थानका दिन तिनीहरूका निम्ति त्यो भारी अति निकृष्ट हुनेछ,

خَٰلِدِينَ فِيهِ ۖ وَسَآءَ لَهُمْ يَوْمَ ٱلْقِيَٰمَةِ حِمْلًا ﴿١٠١﴾

१०३. त्यसदिन जब तुरही बजाइनेछ, तथा हामी अपराधीहरूलाई त्यसदिन नेत्रहरू नीला भएका अवस्थामा एकत्रित गर्नेछौं ।

يَوْمَ يُنفَخُ فِي ٱلصُّورِ ۚ وَنَحْشُرُ ٱلْمُجْرِمِينَ يَوْمَئِذٍ زُرْقًا ﴿١٠٢﴾

१०४. तिनीहरू परस्पर (के भन्दै) मधुरो स्वरमा वार्ता गर्नेछन् (भने), "तिमीहरू केवल दस (दिन) मात्र पृथ्वीमा रहेका थियौ"-

يَتَخَٰفَتُونَ بَيْنَهُمْ إِن لَّبِثْتُمْ إِلَّا عَشْرًا ﴿١٠٣﴾

१०५. जुनकुरा तिनीहरूले भन्नेछन् त्यसलाई हामी राम्ररी जान्दछौं-जब तिनीहरूमध्ये सर्वोत्तम जीवनयापन गरेको व्यक्तिले भन्नेछ, "तिमीहरू केवल एक दिन रह्यौ ।"

نَّحْنُ أَعْلَمُ بِمَا يَقُولُونَ إِذْ يَقُولُ أَمْثَلُهُمْ طَرِيقَةً إِن لَّبِثْتُمْ إِلَّا يَوْمًا ﴿١٠٤﴾

१०६. तथा तिमीसित तिनीहरूले पर्वतहरूका बारेमा सोध्छन् । तिमी भन,

وَيَسْـَٔلُونَكَ عَنِ ٱلْجِبَالِ فَقُلْ يَنسِفُهَا رَبِّي نَسْفًا ﴿١٠٥﴾

"मेरा प्रतिपालकले तिनीहरूलाई तोडेर टुका-टुका पार्नेछन् तथा त्यसलाई धूलो बनाई फैलाउने छन् ।

فَيَذَرُهَا قَاعًا صَفْصَفًا ١٠٦

१०७. "तथा तिनीहरूलाई उनले बाँझो मैदान बनाएर छाड्नेछन्,

لَّا تَرَىٰ فِيهَا عِوَجًا وَلَا أَمْتًا ١٠٧

१०८. "जहाँ तिमीले न खाडल देख्नेछौ न त ढिस्का नै ।"

يَوْمَئِذٍ يَتَّبِعُونَ الدَّاعِيَ لَا عِوَجَ لَهُ ۖ وَخَشَعَتِ الْأَصْوَاتُ لِلرَّحْمَٰنِ فَلَا تَسْمَعُ إِلَّا هَمْسًا ١٠٨

१०९. त्यसदिन तिनीहरूले एउटा यस्तो (सन्मार्गी) आह्वानकारीको अनुसरण गर्नेछन् जसमा कुनै प्रकारको कुटिलता रहेको छैन; तथा परम कृपालु (प्रतिपालक) का सामुन्ने (सम्पूर्ण) ध्वनिहरू दब्नेछन् तथा पाइलाको मधुरो ध्वनिबाहेक तिमीले केही सुन्न सक्नेछेनौ ।

يَوْمَئِذٍ لَّا تَنفَعُ الشَّفَاعَةُ إِلَّا مَنْ أَذِنَ لَهُ الرَّحْمَٰنُ وَرَضِيَ لَهُ قَوْلًا ١٠٩

११०. त्यसदिन जसलाई परम कृपालु (प्रतिपालक) ले अनुमति दिन्छन् र जसको (विश्वासपूर्ण) कुरालाई उनले मन पराउँछन् त्यसबाहेक (कसैलाई पनि) मध्यस्थताले लाभ दिनेछैन ।

يَعْلَمُ مَا بَيْنَ أَيْدِيهِمْ وَمَا خَلْفَهُمْ وَلَا يُحِيطُونَ بِهِ عِلْمًا ١١٠

१११. एनी तिनीहरूका अघि रहेका (सम्पूर्ण) कुराहरूलाई र तिनीहरूका पछाडि रहेका (सम्पूर्ण) कुराहरूलाई जान्दछन् । परन्तु तिनीहरूले (आफ्नो) ज्ञानद्वारा त्यसलाई समेट्न सक्दैनन् ।

وَعَنَتِ الْوُجُوهُ لِلْحَيِّ الْقَيُّومِ ۖ وَقَدْ خَابَ مَنْ حَمَلَ ظُلْمًا ١١١

११२. तथा जीवित, स्वयम् कायम रही सबैलाई कायम राख्ने (अल्लाह) का सामुन्ने (सम्पूर्ण) मुहारहरू नम्रतापूर्वक झुक्नेछन् । तथा जसले अन्यायको बोझ उठाउँछ त्यो व्यक्ति नाश हुनेछ ।

وَمَن يَعْمَلْ مِنَ الصَّالِحَاتِ وَهُوَ مُؤْمِنٌ فَلَا يَخَافُ ظُلْمًا وَلَا هَضْمًا ١١٢

११३. परन्तु जसले विश्वासी रही पुण्यकार्य गर्ने गर्छ, त्यो व्यक्ति न कुनै प्रकारको अन्यायबाट डराउने छ न त कुनै हानिबाट

नै ।

وَكَذَٰلِكَ أَنزَلْنَٰهُ قُرْءَانًا عَرَبِيًّا وَصَرَّفْنَا فِيهِ مِنَ ٱلْوَعِيدِ لَعَلَّهُمْ يَتَّقُونَ أَوْ يُحْدِثُ لَهُمْ ذِكْرًا ﴿١١٣﴾

११४. तथा यसैप्रकार हामीले यस कुरानलाई अरबी भाषामा अवतीर्ण गरेका छौं- तथा त्यसमा हामीले विशेष प्रकारका चेतावनीहरूको वर्णन गरेका छौं ताकि तिनीहरूले प्रतिपालकको डर धारन गरून् अथवा ती (चेतावनी) हरूले तिनीहरूमा (ईश्वरीय) स्मरण जन्माउन् ।

فَتَعَٰلَى ٱللَّهُ ٱلْمَلِكُ ٱلْحَقُّ ۗ وَلَا تَعْجَلْ بِٱلْقُرْءَانِ مِن قَبْلِ أَن يُقْضَىٰٓ إِلَيْكَ وَحْيُهُۥ ۖ وَقُل رَّبِّ زِدْنِى عِلْمًا ﴿١١٤﴾

११५. अतः ती प्रकृत सम्राट अल्लाह अति महान छन् । तथा तिमी कुरानका सम्बन्धमा तिमीमाथि यसको अवतीर्ण हुने कम समाप्त हुनुअघि हत्तार नगर, परन्तु केवल के भन्ने गर भने, "हे मेरा प्रतिपालक, मेरो ज्ञान वृद्धि गर ।"

وَلَقَدْ عَهِدْنَآ إِلَىٰٓ ءَادَمَ مِن قَبْلُ فَنَسِىَ وَلَمْ نَجِدْ لَهُۥ عَزْمًا ﴿١١٥﴾

११६. तथा वस्तुतः यसअघि आदमसित हामीले एउटा अङ्गीकार लिएका थियौं, परन्तु उनले त्यसलाई बिर्सिए तथा उनमा हामीले (आज्ञा उल्लङ्घन गर्ने) कुनै अभिप्राय पाएनौं ।

وَإِذْ قُلْنَا لِلْمَلَٰٓئِكَةِ ٱسْجُدُوا۟ لِءَادَمَ فَسَجَدُوٓا۟ إِلَّآ إِبْلِيسَ أَبَىٰ ﴿١١٦﴾

११७. तथा जब हामीले देवदूतहरूलाई "आदमका आज्ञाकारी बन," भनी आदेश दियौं, तिनीहरू सबैले आज्ञापालन गरे । परन्तु इब्लिसले (आज्ञापालन गरेन) । उसले अस्वीकार गऱ्यो ।

فَقُلْنَا يَٰٓـَٔادَمُ إِنَّ هَٰذَا عَدُوٌّ لَّكَ وَلِزَوْجِكَ فَلَا يُخْرِجَنَّكُمَا مِنَ ٱلْجَنَّةِ فَتَشْقَىٰٓ ﴿١١٧﴾

११८. त्यसपछि हामीले भन्यौं, "हे आदम, यो तिम्रो र तिम्री पत्नीको शत्रु हो; त्यसकारण त्यसले तिमीहरू दुबैलाई बगैंचाबाट बाहिर निकाल्न नपाओस्; अन्यथा तिमी अभागी हुनेछौ ।

إِنَّ لَكَ أَلَّا تَجُوعَ فِيهَا وَلَا تَعْرَىٰ ﴿١١٨﴾

११९. तिम्रा निम्ति (सम्पूर्ण व्यवस्था) रहेको छ ताकि तिमीले त्यहाँ भोकै बस्नु नपरोस् न त तिमीले निर्वस्त्र रहनु परोस् ।

وَأَنَّكَ لَا تَظْمَؤُا فِيهَا وَلَا تَضْحٰى ﴿١٢٠﴾

१२०. "तथा तिमीले न त्यहाँ प्यास खप्नु परोस्, न त तिमीले सूर्यको ताप सहनु परोस् ।"

فَوَسْوَسَ إِلَيْهِ الشَّيْطٰنُ قَالَ يٰٓاٰدَمُ هَلْ أَدُلُّكَ عَلٰى شَجَرَةِ الْخُلْدِ وَمُلْكٍ لَّا يَبْلٰى ﴿١٢١﴾

१२१. परन्तु शैतानले उनलाई कुमन्त्रणा दियो; उसले भन्यो, "हे आदम, के तिमीलाई म एउटा चिरञ्जीवी वृक्षको र एउटा कदापि पतन नहुने राज्यको बाटो देखाउँ ?"

فَأَكَلَا مِنْهَا فَبَدَتْ لَهُمَا سَوْاٰتُهُمَا وَطَفِقَا يَخْصِفٰنِ عَلَيْهِمَا مِنْ وَّرَقِ الْجَنَّةِ وَعَصٰٓى اٰدَمُ رَبَّهٗ فَغَوٰى ﴿١٢٢﴾

१२२. त्यसपछि तिनीहरू दुबैले त्यसबाट खाए, अतः तिनीहरूको आन्तरिक दुर्बलता तिनीहरूप्रति स्पष्ट खुल्न गयो, तथा तिनीहरूले स्वयम्लाई बगैंचाका पातहरूले ढाक्न लागे । तथा आदमले आफ्ना प्रतिपालकको अवज्ञा गरे, तथा सन्मार्गबाट टाढिन पुगे* ।

---

* टिप्पणीः अधिकतर अनुवादकहरूले उक्त दृश्यलाई शाब्दिकरूपमा लिएका छन् जबकि मूल रचना मै शाब्दिक अर्थ प्रयोगको खण्डन (उपेक्षा) गर्न प्रस्वत्व प्रमाण रहेको छ । त्यो पाप जसको उल्लेख (यहाँ) रहेको छ त्यसको सम्बन्ध निस्सन्देह आन्तरिक अस्थिरता (दुर्बलता) सित रहेको छ जसको सङ्केत आयतको त्यस अंशद्वारा गरिएको छ जसले तिनीहरूको "सौआतुहुमा" سَوْاٰتُهُمَا (दर्बलता) तिनीहरूप्रति स्पष्ट खुल्न गयो भनी घोषणा गर्छ । यदि त्यो शारीरिक नग्नता रहेको थियो भने तिनीहरू आफ्नो जन्मकालदेखि लिएर उल्लेखित घटना घटेको समयसम्म आफ्नो नग्नताबाट कसरी अविहित रहन सक्थे र? अतः उक्त शाब्दिक अर्थ अनुचित रूपमा पवित्र कुरानमा समारोपण गरिएको हो भन्ने कुरो प्रमाणित हुन्छ । "सोआ" ( سَوْأ ) साधारणतयाः लज्जास्पद कार्य तथा कुप्रवृत्तिप्रति प्रयोग हुन्छ । डगमागाउने व्यक्तिले डगमगाएको क्षणमा आफ्नै आन्तरिक दुर्बलताहरूबाट त्यसको आतङ्क अनुभव गर्छ । त्यो दुर्बलता मानसिक र आन्तरिक हो जसको सम्बन्ध मन र आत्मासित रहेको छ । तथा कसैले आफ्नो शरीरमा पत्ताहरू टाँस्दैमा त्यसलाई ढाक्न अथवा लुकाउन सक्दैन । अतः मूल रचनामा उल्लेखित आदम र इभ (हव्वा) ले गरेको त्यो भूल चाहे जुनसुकै होस्, त्यसलाई ढाक्नुको अर्थ अल्लाहसित क्षमायाचना गर्नु र (अल्लाहसितै शरणयाचना गर्नु) बाहेक अन्य केही हुन सक्दैन ।

(बगैंचा) ती पत्ताहरूको उल्लेख रूपकात्मक रहेको बुझिन्छ जसको अर्थ अल्लाहको क्षमादान अन्तर्गत रहेर उनको आश्रययाचना गर्नु हो, तथा कुरानअनुसार आदमले त्यही गरेका थिए, जसमा स्पष्टरूपमा के उल्लेख रहेको छ भने स्वयम् अल्लाहले उनलाई ती शब्दहरू सिकाएका थिए जसले उनलाई भूल (आज्ञालङ्घन)

ثُمَّ اجْتَبَاهُ رَبُّهُ فَتَابَ عَلَيْهِ وَهَدَىٰ ﴿١٢٢﴾

१२३. त्यसपछि उनका प्रतिपालकले (आफ्नो अनुग्रहका निम्ति) (उनलाई) चुने, तथा करुणापूर्वक उनीतर्फ दृष्टि गरे र उनलाई मार्ग देखाए ।

قَالَ اهْبِطَا مِنْهَا جَمِيعًا بَعْضُكُمْ لِبَعْضٍ عَدُوٌّ فَإِمَّا يَأْتِيَنَّكُمْ مِنِّي هُدًى فَمَنِ اتَّبَعَ هُدَايَ فَلَا يَضِلُّ وَلَا يَشْقَىٰ ﴿١٢٣﴾

१२४. उनले भने, तिमीहरू दुबै सबै साथीहरू समेत यहाँबाट तुरुन्त निस्केर जाऊ, तिमीहरूमध्ये केही व्यक्तिहरू अन्य केही व्यक्तिहरूका शत्रु हुनेछौ । तथा यदि तिमीहरूसमक्ष मेरो मार्गदर्शन आएमा, जसले मेरो मार्गदर्शनको अनुसरण गर्नेछ, त्यो व्यक्ति न त पथभ्रष्ट हुनेछ, न कहिल्यै दुःखी हुनेछ ।

وَمَنْ أَعْرَضَ عَنْ ذِكْرِي فَإِنَّ لَهُ مَعِيشَةً ضَنْكًا وَنَحْشُرُهُ يَوْمَ الْقِيَامَةِ أَعْمَىٰ ﴿١٢٤﴾

१२५. "परन्तु जुन व्यक्ति मरो स्मरणबाट विमुख हुन्छ उसको जीवन सङ्कीर्ण हुनेछ, तथा पुनरुत्थानका दिन त्यसलाई हामी अन्धो (अवस्थामा) उठाउनेछौं ।"

قَالَ رَبِّ لِمَ حَشَرْتَنِي أَعْمَىٰ وَقَدْ كُنْتُ بَصِيرًا ﴿١٢٥﴾

१२६. उसले भन्नेछ, "हे मेरा प्रतिपालक, (पहिला त) म राम्ररी देख्दथे फेरि तिमीले अन्धो (अवस्थामा) किन मलाई उठायौ ?

قَالَ كَذَٰلِكَ أَتَتْكَ آيَاتُنَا فَنَسِيتَهَا وَكَذَٰلِكَ الْيَوْمَ تُنْسَىٰ ﴿١٢٦﴾

१२७. (अल्लाहले) भन्नेछन्, "यसै -हुनु थियो); तिमीसमक्ष हाम्रा निर्देशनहरू आएका थिए जसलाई तिमीले वेवास्ता गरेका थियौं; तथा ठिक त्यसैगरी आज तिमीलाई विस्मरण गरिनेछ ।"

وَكَذَٰلِكَ نَجْزِي مَنْ أَسْرَفَ وَلَمْ يُؤْمِنْ بِآيَاتِ رَبِّهِ وَلَعَذَابُ الْآخِرَةِ أَشَدُّ وَأَبْقَىٰ ﴿١٢٧﴾

१२८. तथा जसले अपव्यय गर्छ र आफ्ना प्रतिपालकका निदर्शेनहरूप्रति विश्वास गर्दैन त्यसलाई हामी यसैप्रकार प्रतिदान दिने गर्छौं; तथा परलोकको दण्ड त त्योभन्दा अधिक कठोर र दीर्घकालीन हुनेछ ।

---

को कुप्रभावबाट मुक्त गरेका थिए तथा तिनै शब्दहरूको उत्तरमा अल्लाहले उनीतर्फ कृपा र क्षमादानपूर्वक दृष्टि गरे ।

१२९. तिनीहरूभन्दा पहिला कति यस्ता पुस्ताहरूलाई हामीले ध्वस्त पार्‍यौं जसका घर-आँगनमा -आज) तिनीहरू हिँड्डुल गर्छन्, के तिनीहरूलाई त्यस कुराले मार्गदर्शन प्रदान गरेन त? वस्तुतः ती कुराहरूमा नै बुद्धिमान व्यक्तिहरूका निम्ति चिह्नहरू रहेका छन् ।

أَفَلَمْ يَهْدِ لَهُمْ كَمْ أَهْلَكْنَا قَبْلَهُم مِّنَ الْقُرُونِ يَمْشُونَ فِي مَسَاكِنِهِمْ ۗ إِنَّ فِي ذَٰلِكَ لَآيَاتٍ لِّأُولِي النُّهَىٰ ﴿١٢٨﴾

१३०. तथा यदि तिम्रा प्रतिपालकका तर्फबाट एउटा वचन पहिला नै गैसकेको नभए, र एउटा म्याद पहिला नै निर्धारित न भएको भए, (तिनीहरूको दण्ड) चिरस्थायी हुने थियो

وَلَوْلَا كَلِمَةٌ سَبَقَتْ مِن رَّبِّكَ لَكَانَ لِزَامًا وَأَجَلٌ مُّسَمًّى ﴿١٢٩﴾

१३१. अतः तिनीहरूका कुराप्रति धैर्य धारण गर तथा सूर्योदयअघि र सूर्यास्तअघि आफ्ना प्रतिपालकको प्रशंसाकासाथ गुणगान गर; तथा रात्रिका विभिन्न घडीहरूमा र दिनका विभिन्न भागहरूमा उनको गुणगान गर, ताकि तिमीलाई (वास्तविक) आनन्द प्राप्त होस् ।

فَاصْبِرْ عَلَىٰ مَا يَقُولُونَ وَسَبِّحْ بِحَمْدِ رَبِّكَ قَبْلَ طُلُوعِ الشَّمْسِ وَقَبْلَ غُرُوبِهَا ۖ وَمِنْ آنَاءِ اللَّيْلِ فَسَبِّحْ وَأَطْرَافَ النَّهَارِ لَعَلَّكَ تَرْضَىٰ ﴿١٣٠﴾

१३२. तथा तिनीहरूमध्ये केही व्यक्तिहरूलाई (छोटो समयसम्म) आनन्द उपभोगका निम्ति जुन सँसारिक जीवनको वैभव हामीले प्दान गरेका छौं ताकि त्यसद्वारा हामी तिनीहरूलाई जाँच्न सकौं, त्यसतर्फ तिमी आँखा तानेर हेर्ने नगर । तथा तिम्रा प्रतिपालकको जीवनवृत्ति नै सार्वेत्तम र दीर्घकालीन रहेको छ ।

وَلَا تَمُدَّنَّ عَيْنَيْكَ إِلَىٰ مَا مَتَّعْنَا بِهِ أَزْوَاجًا مِّنْهُمْ زَهْرَةَ الْحَيَاةِ الدُّنْيَا لِنَفْتِنَهُمْ فِيهِ ۚ وَرِزْقُ رَبِّكَ خَيْرٌ وَأَبْقَىٰ ﴿١٣١﴾

१३३. तथा आफ्ना मानिसहरूलाई नमाज अनुष्ठानको उपदेश देउ र तिमी पनि त्यस कार्यमा निरन्तर लागि पर । हामी तिमीबाट जीविका माग्दैनौं; हामी नै तिमीलाई जीवनवृत्ति प्रदान गर्छौं । तथा परिणाम भने धर्मनिष्ठताको नै उत्तम रहने गर्छ ।

وَأْمُرْ أَهْلَكَ بِالصَّلَاةِ وَاصْطَبِرْ عَلَيْهَا ۖ لَا نَسْأَلُكَ رِزْقًا ۖ نَّحْنُ نَرْزُقُكَ ۗ وَالْعَاقِبَةُ لِلتَّقْوَىٰ ﴿١٣٢﴾

وَقَالُوْا لَوْلَا يَأْتِيْنَا بِاٰيَةٍ مِّنْ رَّبِّهٖ ۚ اَوَلَمْ تَاْتِهِمْ بَيِّنَةُ مَا فِى الصُّحُفِ الْاُوْلٰى ﴿١٣٣﴾

१३४ तथा तिनीहरू भन्छन्, "त्यो व्यक्ति आफ्ना प्रतिपालकका तर्फबाट हामीसमक्ष किन कुनै चिह्न ल्याउँदैन? लिपि पहिलाका धर्म लिपिहरूमा (उल्लेखित) स्पष्ट प्माणहरू तिनीहरूसमक्ष आएका छैनन् र?

وَلَوْ اَنَّآ اَهْلَكْنٰهُمْ بِعَذَابٍ مِّنْ قَبْلِهٖ لَقَالُوْا رَبَّنَا لَوْلَآ اَرْسَلْتَ اِلَيْنَا رَسُوْلًا فَنَتَّبِعَ اٰيٰتِكَ مِنْ قَبْلِ اَنْ نَّذِلَّ وَنَخْزٰى ﴿١٣٤﴾

१३५. तथा यदि हामीले तिनीहरूलाई यसअघि नै कुनै दण्डद्वारा नाश गरेका भए तिनीहरूले अवश्य के भन्ने थिए भने, "हे हाम्रा प्रतिपालक तिमीले हामीसमक्ष कुनै सन्देशवाहक किन पठाएनौ ताकि हामी लाञ्छित र अपमानित हुनुअघि नै तिम्रा निर्देशनहरूको अनुसरण गर्ने थियौं ?"

قُلْ كُلٌّ مُّتَرَبِّصٌ فَتَرَبَّصُوْا ۚ فَسَتَعْلَمُوْنَ مَنْ اَصْحٰبُ الصِّرَاطِ السَّوِيِّ وَمَنِ اهْتَدٰى ﴿١٣٥﴾

१३६. तिमी भन, "हरेक व्यक्ति प्रतीक्षारत छ; त्यसकारण तिमीहरू पनि प्रतीक्षा गर, तथा कुन व्यक्तिहरू सन्मार्गी हुन् र कसले (सत्य) मार्गदर्शनको अनुसरण गर्छन् भन्ने कुरा तिमीहरूले शीघ्रै जान्नेछौ ।"

سُوْرَةُ الْاَنْبِيَاۤءِ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ مِائَةٌ وَّثَلٰثَ عَشْرَةَ اٰيَةً وَّسَبْعَةُ رُكُوْعَاتٍ

## अल्-अम्बिया
(हिजरतअघि अवतरित)

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

२. मनिसहरूको हिसाब लिने समय अति निकट आइसकेको छ, तथापि तिनीहरू लापर्बाहीमा परी विमुख भइरहेछन् ।

اِقْتَرَبَ لِلنَّاسِ حِسَابُهُمْ وَهُمْ فِيْ غَفْلَةٍ مُّعْرِضُوْنَ ②

३. तिनीहरूसमक्ष जब-जब कुनै नवीन उपदेश तिनीहरूका प्रतिपालकका तर्फबाट आउँछ, तिनीहरू (त्यसलाई) सुनेर ठट्टामा उडाउने गर्छन् ।

مَا يَاْتِيْهِمْ مِّنْ ذِكْرٍ مِّنْ رَّبِّهِمْ مُّحْدَثٍ اِلَّا اسْتَمَعُوْهُ وَهُمْ يَلْعَبُوْنَ ③

४. (तथा तिनीहरूका) हृदय विस्मरणयुक्त छन् । तथा जसले अत्याचार गर्छन् तिनीहरू आफ्नो परामर्शलाई गुप्त राख्ने गर्छन् (त्यसपछि भन्छन्), "के त्यो (मानिस) तिमीहरूजस्तै केवल एउटा साधारण मानिस नै होइन र त्यसोभए के तिमीहरू जानी बुझीकन त्यस जादुप्रति सहमत हुन्छौ?"

لَاهِيَةً قُلُوْبُهُمْ ؕ وَاَسَرُّوا النَّجْوَى ۖ الَّذِيْنَ ظَلَمُوْا ۖ هَلْ هٰذَآ اِلَّا بَشَرٌ مِّثْلُكُمْ ۚ اَفَتَاْتُوْنَ السِّحْرَ وَاَنْتُمْ تُبْصِرُوْنَ ④

५. (अल्लाहले नबीलाई) भने, "(तिमी भन), "जुनकुरा आकाशमण्डलमा गरिन्छ र जुनकुरा पृथ्वीमा गरिन्छ मेरा प्रतिपालकले ती कुराहरूलाई जान्दछन् । तथा उनी सर्वस्रोता, सर्वज्ञ छन् ।"

قٰلَ رَبِّيْ يَعْلَمُ الْقَوْلَ فِى السَّمَآءِ وَالْاَرْضِ ؗ وَهُوَ السَّمِيْعُ الْعَلِيْمُ ⑤

६. होइन, अपितु तिनीहरू त के भन्छन् भने, "(यी त केवल) विश्रृङ्खल सपनाहरू (मात्र) हुन्; होइन, अपितु यी त उसले गढेका (कुराहरू) हुन्; होइन, त्यो व्यक्ति त (केवल) एउटा कवि हो । त्यसोभए जसरी

بَلْ قَالُوْٓا اَضْغَاثُ اَحْلَامٍۭ بَلِ افْتَرٰىهُ بَلْ هُوَ شَاعِرٌ ۚۖ فَلْيَاْتِنَا بِاٰيَةٍ كَمَآ اُرْسِلَ الْاَوَّلُوْنَ ⑥

पहिलाका (नबी)हरूलाई (चिह्नका साथ) पठाइएको थियो ठिक त्यस्तै चिह्न उसले हामीसमक्ष प्रस्तुत गरोस् ।"

مَآ اٰمَنَتْ قَبْلَهُمْ مِّنْ قَرْيَةٍ اَهْلَكْنٰهَا ۚ اَفَهُمْ يُؤْمِنُوْنَ ۝٦

७. तिनीहरूभन्दा पहिला जुन नगर(वासी)हरूलाई हामीले विनाश गरेका थियौं तिनीहरूले कदापि विश्वास गरेनन् भने के यिनीहरूले विश्वास गर्लान् र?

وَمَآ اَرْسَلْنَا قَبْلَكَ اِلَّا رِجَالًا نُّوْحِيْٓ اِلَيْهِمْ فَسْـَٔلُوْٓا اَهْلَ الذِّكْرِ اِنْ كُنْتُمْ لَا تَعْلَمُوْنَ ۝٧

८. तिमीहरूभन्दा पहिला पनि हामीले केवल पुरुषहरूलाई नै सन्देशवाहकस्वरूप पठाएका थियौं जसमाथि हामीले आकाशवाणी गरेका थियौं । अतः यदि तिमीहरूलाई थाहा छैन भने धर्मलिपिहरूका ज्ञाता (विशेषज्ञ) व्यक्तिहरूलाई सोध ।

وَمَا جَعَلْنٰهُمْ جَسَدًا لَّا يَاْكُلُوْنَ الطَّعَامَ وَمَا كَانُوْا خٰلِدِيْنَ ۝٨

९. तथा हामीले तिनीहरूलाई खाद्य ग्रहण नगर्ने शरीर प्रदान गरेका थिएनौ, न त तिनीहरू सदाका लागि जीवित रहने व्यक्तिहरू नै थिए ।

ثُمَّ صَدَقْنٰهُمُ الْوَعْدَ فَاَنْجَيْنٰهُمْ وَمَنْ نَّشَآءُ وَاَهْلَكْنَا الْمُسْرِفِيْنَ ۝٩

१०. त्यसपछि हामीले तिनीहरूसित गरेको अङ्गीकार पूर्ण गऱ्यौं तथा हामीले तिनीहरूलाई र हामीले चाहेका व्यक्तिहरूलाई शत्रुबाट बचायौं; तथा हामीले सीमोल्लङ्घनकारी व्यक्तिहरूलाई ध्वस्त पाऱ्यौं ।

لَقَدْ اَنْزَلْنَآ اِلَيْكُمْ كِتٰبًا فِيْهِ ذِكْرُكُمْ ۗ اَفَلَا تَعْقِلُوْنَ ۝١٠ ع

११. अहिले हामीले तिमीहरूतर्फ एउटा यस्तो पुस्तक अवतीर्ण गरेका छौं जसमा तिमीहरूका उपदेशका (सबै) आवश्यकीय साधनहरू रहेका छन्; अतः के तिमीहरू बुझ्दैनौ?

وَكَمْ قَصَمْنَا مِنْ قَرْيَةٍ كَانَتْ ظَالِمَةً وَّاَنْشَاْنَا بَعْدَهَا قَوْمًا اٰخَرِيْنَ ۝١١

१२. तथा अत्याचारपूर्ण कार्यहरूमा लिप्त अनेकौं नगरहरूलाई हामीले पूर्णरूपले ध्वस्त पाऱ्यौं, तथा तिनीहरूपछि अन्य

मानिसहरूलाई खडा गऱ्यौं ।

فَلَمَّآ أَحَسُّوا۟ بَأْسَنَآ إِذَا هُم مِّنْهَا يَرْكُضُونَ ﴿١٢﴾

१२. तथा जब तिनीहरूले हाम्रो दण्डलाई अनुभव गरे, लौ हेर ! तिनीहरू त्यसबाट -बच्नका निम्ति) भाग्न थाले ।

لَا تَرْكُضُوا۟ وَٱرْجِعُوٓا۟ إِلَىٰ مَآ أُتْرِفْتُمْ فِيهِ وَمَسَٰكِنِكُمْ لَعَلَّكُمْ تُسْـَٔلُونَ ﴿١٣﴾

१४. तिमीहरू नभाग, बरु आफूले भोगेको त्यो सुख सुविधा तथा आफ्ना घरहरूतर्फ फर्क ताकि तिमीहरूलाई हिसाब-किताब -लिन)का निम्ति ल्याइयोस ।"

قَالُوا۟ يَٰوَيْلَنَآ إِنَّا كُنَّا ظَٰلِمِينَ ﴿١٤﴾

१५. तिनीहरूले भने, "हामीमाथि धिक्कार छ, वस्तुतः हामीहरू अत्याचारी नै थियौं ।"

فَمَا زَالَت تِّلْكَ دَعْوَىٰهُمْ حَتَّىٰ جَعَلْنَٰهُمْ حَصِيدًا خَٰمِدِينَ ﴿١٥﴾

१६. हामीले तिनीहरूलाई काटेर फ्याँकी भस्म नपारुञ्जेलसम्म तिनीहरूको त्यो विलाप समाप्त भएन ।

وَمَا خَلَقْنَا ٱلسَّمَآءَ وَٱلْأَرْضَ وَمَا بَيْنَهُمَا لَٰعِبِينَ ﴿١٦﴾

१७. तथा आकाश र पृथ्वीलाई तथा यी दुबैका बीचमा रहेका सम्पूर्ण वस्तुहरूलाई हामीले खेलबाडस्वरूप सृष्टि गरेका होइनौं

لَوْ أَرَدْنَآ أَن نَّتَّخِذَ لَهْوًا لَّٱتَّخَذْنَٰهُ مِن لَّدُنَّآ إِن كُنَّا فَٰعِلِينَ ﴿١٧﴾

१८. यदि हामीले मनोविनोद गर्न चाहेका भए र यदि हामीले साँचै नै (त्यस्तो कार्य) गर्ने गर्थ्यौं भने हामी अवश्य आफ्नै जुनाफमा त्यसलाई प्राप्त गर्ने थियौं ।

بَلْ نَقْذِفُ بِٱلْحَقِّ عَلَى ٱلْبَٰطِلِ فَيَدْمَغُهُۥ فَإِذَا هُوَ زَاهِقٌ ۚ وَلَكُمُ ٱلْوَيْلُ مِمَّا تَصِفُونَ ﴿١٨﴾

१९. होइन, अपितु हामी सत्यलाई असत्यमाथि निक्षेप गर्छौं, तथा त्यसले उसको मस्तक तोडिदिन्छ, तथा हेर ! त्यो ता विलोप हुन पुग्छ । तथा (अल्लाहप्रति) तिमीहरूले गढेका कुराहरूका कारण तिमीहरूमाथि धिक्कार होस् ।

وَلَهُۥ مَن فِى ٱلسَّمَٰوَٰتِ وَٱلْأَرْضِ ۚ وَمَنْ عِندَهُۥ لَا يَسْتَكْبِرُونَ عَنْ عِبَادَتِهِۦ وَلَا يَسْتَحْسِرُونَ ﴿١٩﴾

२०. आकाशमण्डल र पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरूमाथि उनकै अधिकार रहेको छ । तथा उनीसमक्ष रहनेहरूले उनको उपासनालाई उपेक्षा गर्दैनन्, न त

तिनीहरू थकित नै हुन्छन् ।

يُسَبِّحُونَ اللَّيْلَ وَالنَّهَارَ لَا يَفْتُرُونَ ﴿٢٠﴾

२१. तिनीहरू रात दिन (उनको) गुणगान गर्छन्, (तथा) तिनीहरू निरुत्साहित हुँदैनन्

أَمِ اتَّخَذُوا آلِهَةً مِّنَ الْأَرْضِ هُمْ يُنشِرُونَ ﴿٢١﴾

२२. के तिनीहरूले पृथ्वीमा यस्ता उपास्यहरू बनाएका छन् जसले मृतलाई जीवत तुल्याउछन्?

لَوْ كَانَ فِيهِمَا آلِهَةٌ إِلَّا اللَّهُ لَفَسَدَتَا ۚ فَسُبْحَانَ اللَّهِ رَبِّ الْعَرْشِ عَمَّا يَصِفُونَ ﴿٢٢﴾

२३. यदि (आकाशमण्डल र पृथ्वी) दुबैमा अल्लाहबाहेक अन्य उपास्यहरू रहेका भए, ती दुबै -आकाशमण्डल र पृथ्वी) अव्यवस्थित भई ध्वस्त हुने थिए । अतः परम सिंहासनका स्वामी, अल्लाह तिनीहरूले गढेका कुराहरूभन्दा अति उच्च परम प्रशंसनीय छन् ।

لَا يُسْأَلُ عَمَّا يَفْعَلُ وَهُمْ يُسْأَلُونَ ﴿٢٣﴾

२४. उनले गरेका कार्यबारे कसैले उनलाई प्रश्न गर्न सक्नेछैन, परन्तु तिनीहरूलाई भने सोधिनेछ ।

أَمِ اتَّخَذُوا مِن دُونِهِ آلِهَةً ۖ قُلْ هَاتُوا بُرْهَانَكُمْ ۖ هَٰذَا ذِكْرُ مَن مَّعِيَ وَذِكْرُ مَن قَبْلِي ۗ بَلْ أَكْثَرُهُمْ لَا يَعْلَمُونَ الْحَقَّ ۖ فَهُم مُّعْرِضُونَ ﴿٢٤﴾

२५. के तिनीहरूले उनीबाहेक अन्य उपास्यहरू बनाएका छन्? तिमी भन, "आफ्नो प्रमाण प्रस्तुत गर । यो पुस्तक मसित रहेका व्यक्तिहरूका निम्ति तथा मभन्दा पहिला रहेका व्यक्तिहरूका निम्ति (पनि) रहेको छ ।" होइन, (अपितु) तिनीहरूमध्ये अधिकतर व्यक्तिहरू सत्य के हो -भन्ने कुरा) जान्दैनन् त्यसकारण तिनीहरू विमुख हुने गर्छन् ।

وَمَا أَرْسَلْنَا مِن قَبْلِكَ مِن رَّسُولٍ إِلَّا نُوحِي إِلَيْهِ أَنَّهُ لَا إِلَٰهَ إِلَّا أَنَا فَاعْبُدُونِ ﴿٢٥﴾

२६. तथा हामीले तिमीभन्दा पहिला पठाएका प्रत्येक सन्देशवाहकलाई "म बाहेक अन्य कोही उपास्य छैन; त्यसकारण (केवल) मेरो उपासना गर" भन्ने आकाशवाणी नगरी पठाएका थिएनौं ।

وَقَالُوا اتَّخَذَ الرَّحْمَٰنُ وَلَدًا ۗ سُبْحَانَهُ ۚ بَلْ عِبَادٌ مُّكْرَمُونَ ﴿٢٦﴾

२७. तथा तिनीहरू भन्छन्, "परम कृपालु (प्रतिपालक)ले स्वयम्का निम्ति पुत्र ग्रहण

गरेका छन् ।" उनी त पवित्र छन् । होइन (अपितु), तिनीहरू त (केवल) सम्मानप्राप्त सेवकहरू हुन् ।

لَا يَسْبِقُونَهُ بِالْقَوْلِ وَهُمْ بِأَمْرِهِ يَعْمَلُونَ ﴿٢٨﴾

२८. उनको वाणीअघि तिनीहरू केही बोल्दैनन्, तथा तिनीहरू (केवल) उनको आदेशको पालना गर्छन् ।

يَعْلَمُ مَا بَيْنَ أَيْدِيهِمْ وَمَا خَلْفَهُمْ وَلَا يَشْفَعُونَ إِلَّا لِمَنِ ارْتَضَىٰ وَهُمْ مِّنْ خَشْيَتِهِ مُشْفِقُونَ ﴿٢٩﴾

२९. उनले तिनीहरूका अघिका कुराहरू तथा तिनीहरूका पछिका कुराहरू (सबै) जान्दछन्, तथा तिनीहरू केवल त्यसेको मध्यस्थता गर्छन् जसका निम्ति उनले इच्छा गर्छन्, तथा तिनीहरू उनका डरले सावधानीपूर्वक कार्य गर्ने गर्छन् ।

وَمَنْ يَقُلْ مِنْهُمْ إِنِّي إِلَٰهٌ مِّنْ دُونِهِ فَذَٰلِكَ نَجْزِيهِ جَهَنَّمَ ۚ كَذَٰلِكَ نَجْزِي الظَّالِمِينَ ﴿٣٠﴾

३०. तथा तिनीहरूमध्ये जसले भन्नेछ, "उनीबाहेक म एउटा उपास्य हुँ," हामी उसलाई त्यसको प्रतिदानस्वरूप नर्कमा हाल्नेछौं। यसैप्कार हामी अत्याचारीहरूलाई प्रतिदान दिने गर्छौं ।

أَوَلَمْ يَرَ الَّذِينَ كَفَرُوا أَنَّ السَّمَاوَاتِ وَالْأَرْضَ كَانَتَا رَتْقًا فَفَتَقْنَاهُمَا ۖ وَجَعَلْنَا مِنَ الْمَاءِ كُلَّ شَيْءٍ حَيٍّ ۖ أَفَلَا يُؤْمِنُونَ ﴿٣١﴾

३१. आकाशमण्डल र पृथ्वी दुईवटा बन्द (ढिकास्वरूप) थिए, त्यसपछि तिनीहरूलाई हामीले खोलिदियौं भन्ने कुरा के अविश्वासीहरूलाई थाहा छैन? तथा हरेक जीवित वस्तुलाई हामीले पानीद्वारा निर्माण गर्‍यौं । अतः के तिनीहरू विश्वास गर्दैनन्?

وَجَعَلْنَا فِي الْأَرْضِ رَوَاسِيَ أَنْ تَمِيدَ بِهِمْ وَجَعَلْنَا فِيهَا فِجَاجًا سُبُلًا لَّعَلَّهُمْ يَهْتَدُونَ ﴿٣٢﴾

३२. तथा पृथ्वीमा हामीले दृढ पर्वतहरू निर्माण गर्‍यौं ताकि त्यो तिनीहरूसहित भूकम्पमा परिणत नहोस्; तथा त्यहाँ हामीले विस्तृत मार्गहरू बनाएका छौं ताकि तिनीहरूलाई उचित मार्ग प्राप्त होस्

وَجَعَلْنَا السَّمَاءَ سَقْفًا مَّحْفُوظًا ۖ وَهُمْ عَنْ آيَاتِهَا مُعْرِضُونَ ﴿٣٣﴾

३३. तथा आकाशलाई हामीले एउटा सुरक्षित छानोस्वरूप बनाएका छौं; तथापि तिनीहरू त्यसका चिह्नहरूबाट विमुख हुने गर्छन् ।

وَهُوَ الَّذِي خَلَقَ اللَّيْلَ وَالنَّهَارَ وَالشَّمْسَ وَالْقَمَرَ ۖ كُلٌّ فِي فَلَكٍ يَسْبَحُونَ ﴿٣٣﴾

३४. तथा ती उनी नै हुन् जसले रात्रि र दिन तथा सूर्य चन्द्र सृष्टि गरे जो (आ (आफ्ना) ग्रहकक्षमा परिकमा गरिरहेछन् ।

وَمَا جَعَلْنَا لِبَشَرٍ مِّن قَبْلِكَ الْخُلْدَ ۖ أَفَإِن مِّتَّ فَهُمُ الْخَالِدُونَ ﴿٣٤﴾

३५. तिमीभन्दा पहिला कुनै मानिसलाई हामीले चिरंजीवी बनाएनौं । अतः यदि तिम्रो मृत्यु भएमा, के तिनीहरू चाहिँ (यहाँ) सदा जीवित रहनेछन् त?

كُلُّ نَفْسٍ ذَائِقَةُ الْمَوْتِ ۗ وَنَبْلُوكُم بِالشَّرِّ وَالْخَيْرِ فِتْنَةً ۖ وَإِلَيْنَا تُرْجَعُونَ ﴿٣٥﴾

३६. हरेक प्राणीले मृत्यु चाख्नेछ; तथा नराम्रो र राम्रो अवस्थाको परीक्षाद्वारा हामी तिमीहरूलाई जाँच्नेछौं । तथा हामीतर्फ नै तिमीहरूलाई फर्काएर ल्याइनेछ ।

وَإِذَا رَآكَ الَّذِينَ كَفَرُوا إِن يَتَّخِذُونَكَ إِلَّا هُزُوًا أَهَٰذَا الَّذِي يَذْكُرُ آلِهَتَكُمْ وَهُم بِذِكْرِ الرَّحْمَٰنِ هُمْ كَافِرُونَ ﴿٣٦﴾

३७. तथा जब अविश्वासीहरूले तिमीलाई देख्छन्, तिनीहरूले तिमीलाई केवल एउटा ठट्टाको साधना बनाउँछन् । (तिनीहरू भन्छन्:) “जसले तिमीहरूका उपास्यहरूको (अवगुण) वर्णन गर्छ के त्यो यही व्यक्ति हो?” वस्तुतः तिनीहरू नै (अहङ्कारका साथ) परम कृपालु (अल्लाह)को स्मरण गर्न अस्वीकार गर्छन् ।

خُلِقَ الْإِنسَانُ مِنْ عَجَلٍ ۚ سَأُرِيكُمْ آيَاتِي فَلَا تَسْتَعْجِلُونِ ﴿٣٧﴾

३८. मानिसलाई हत्तारिने प्रकृतिको बनाइएको छ । म (अवश्य) तिमीहरूलाई आफ्ना चिह्नहरू देखाउनेछु परन्तु शीघ्रताको प्रार्थना नगर ।

وَيَقُولُونَ مَتَىٰ هَٰذَا الْوَعْدُ إِن كُنتُمْ صَادِقِينَ ﴿٣٨﴾

३९. तथा तिनीहरू भन्छन्, “यदि तिमीहरू साँचा हौ भने त्यो प्रतिश्रुति कहिले (पूर्ण हुन्छ) त?”

لَوْ يَعْلَمُ الَّذِينَ كَفَرُوا حِينَ لَا يَكُفُّونَ عَن وُجُوهِهِمُ النَّارَ وَلَا عَن ظُهُورِهِمْ وَلَا هُمْ يُنصَرُونَ ﴿٣٩﴾

४०. जब तिनीहरूले आफ्ना मुहारबाट र आफ्ना पिठ्यूँबाट अग्निलाई हटाउन सक्ने छैनन् र तिनीहरूलाई कुनै सहयोग प्राप्त हुने छैन त्यस समयलाई यदि अविश्वासीहरूले जान्न सकेका भए !

بَلْ تَأْتِيْهِمْ بَغْتَةً فَتَبْهَتُهُمْ فَلَا يَسْتَطِيْعُوْنَ رَدَّهَا وَلَا هُمْ يُنْظَرُوْنَ ۝٤٠

४१. होइन, अपितु त्यो (घडी) तिनीहरूमाथि अकस्मात आउनेछ अत: त्यसले तिनीहरूलाई आश्चर्यचकित तुल्याउने छ; तथा तिनीहरूले त्यसलाई पन्छाउन सक्ने छैनन्, न त तिनीहरूलाई कुनै अवसर प्राप्त हुनेछ ।

وَلَقَدِ اسْتُهْزِئَ بِرُسُلٍ مِّنْ قَبْلِكَ فَحَاقَ بِالَّذِيْنَ سَخِرُوْا مِنْهُمْ مَّا كَانُوْا بِهٖ يَسْتَهْزِءُوْنَ ۝٤١

४२. तिमी भन्दा पहिलाका सन्देशवाहकहरूसित पनि ठट्टा गरिएको थियो, परन्तु ती ठट्टाकारीहरूलाई तिनै कुराहरूले घेरे जसद्वारा तिनीहरू ठट्टा गर्ने गर्थे ।

قُلْ مَنْ يَّكْلَؤُكُمْ بِالَّيْلِ وَالنَّهَارِ مِنَ الرَّحْمٰنِ ۭ بَلْ هُمْ عَنْ ذِكْرِ رَبِّهِمْ مُّعْرِضُوْنَ ۝٤٢

४३. तिमी भन, "परम कृपालु (अल्लाह)बाट तिमीहरूलाई रात्रि समयमा र दिनका समयमा कसले बचाउन सक्छ?" तथापि तिनीहरू आफ्ना प्रतिपालकको स्मरणबाट विमुख भइरहेछन्

اَمْ لَهُمْ اٰلِهَةٌ تَمْنَعُهُمْ مِّنْ دُوْنِنَا ۭ لَا يَسْتَطِيْعُوْنَ نَصْرَ اَنْفُسِهِمْ وَلَا هُمْ مِّنَّا يُصْحَبُوْنَ ۝٤٣

४४. के तिनीहरूका कुनै यस्ता उपास्यहरू छन् जसले तिनीहरूलाई बचाउन सकून्? तिनीहरूले त आफ्नै सहयोग गर्न सक्दैनन्, न त तिनीहरूलाई हामीविरुद्ध (कसैको) मित्रता प्राप्त हुनसक्छ

بَلْ مَتَّعْنَا هٰٓؤُلَاۗءِ وَاٰبَاۗءَهُمْ حَتّٰى طَالَ عَلَيْهِمُ الْعُمُرُ ۭ اَفَلَا يَرَوْنَ اَنَّا نَاْتِي الْاَرْضَ نَنْقُصُهَا مِنْ اَطْرَافِهَا ۭ اَفَهُمُ الْغٰلِبُوْنَ ۝٤٤

४५. होइन, (अपितु) हामीले तिनीहरूलाई तथा तिनीहरूका पित्तृहरूलाई (यस संसारका उत्तम वस्तुहरूद्वारा) सम्पन्न तुल्याएका थियौं त्यस अवस्थामा तिनीहरूले लामो समय व्यतीत गरे । हामी तिनीहरूको देशतर्फ अग्रसर भइरहेछौं र त्यसलाई बाहिरी सीमाबाट सङ्कीर्ण तुल्याइरहेछौं भन्ने कुरा तिनीहरूले देखेका छैनन् र? के त्यसपछि पनि तिनीहरू विजयी हुनसक्लान त?

قُلْ اِنَّمَآ اُنْذِرُكُمْ بِالْوَحْيِ ڮ وَلَا يَسْمَعُ الصُّمُّ الدُّعَاۗءَ اِذَا مَا

४६. तिमी भन, "म त तिमीहरूलाई केवल आकाशवाणीअनुसार सतर्क गर्छु ।"

يُنذَرُونَ ﴿٤٦﴾

परन्तु जब बहिराहरूलाई सतर्क गरिन्छ तिनीहरूले त्यो आह्वान सुन्न सक्दैनन् ।

وَلَئِن مَّسَّتْهُمْ نَفْحَةٌ مِّنْ عَذَابِ رَبِّكَ لَيَقُولُنَّ يَا وَيْلَنَا إِنَّا كُنَّا ظَالِمِينَ ﴿٤٧﴾

४७. तथा यदि तिनीहरूलाई तिम्रा प्रतिपालकको दण्डको एउटै झोक्काले छोयो भने पनि तिनीहरूले अवश्य के भन्दै चिच्याउनेछन् भने, "हामीमाथि धिक्कार छ ! वस्तुतः हामी अत्याचारी रहेका थियौं ।"

وَنَضَعُ الْمَوَازِينَ الْقِسْطَ لِيَوْمِ الْقِيَامَةِ فَلَا تُظْلَمُ نَفْسٌ شَيْئًا ۖ وَإِن كَانَ مِثْقَالَ حَبَّةٍ مِّنْ خَرْدَلٍ أَتَيْنَا بِهَا ۗ وَكَفَىٰ بِنَا حَاسِبِينَ ﴿٤٧﴾

४८. तथा पुनरुत्थानका दिन हामी न्यायको तराजुलाई (पूरा-पूरा) तौलने व्यवस्था गर्नेछौं ताकि कुनै ज्यानमाथि रतिभर अन्याय नहोस् । तथा एउटा तोरीको दानो बराबर कर्म भए तापनि त्यसलाई हामी प्रस्तुत गर्नेछौं । तथा हिसाब लिनलाई हामी नै पर्याप्त रहेका छौं

وَلَقَدْ آتَيْنَا مُوسَىٰ وَهَارُونَ الْفُرْقَانَ وَضِيَاءً وَذِكْرًا لِّلْمُتَّقِينَ ﴿٤٨﴾

४९. तथा हामीले मूसा र हारुनलाई विशिष्ट चिह्नहरू र ज्योति तथा सत्यनिष्ठ व्यक्तिहरूका निम्ति एउटा स्मारकग्रन्थ प्रदान गरेका थियौं ।

الَّذِينَ يَخْشَوْنَ رَبَّهُم بِالْغَيْبِ وَهُم مِّنَ السَّاعَةِ مُشْفِقُونَ ﴿٤٩﴾

५०. ती व्यक्तिहरू जसले गुप्तरूपमा आफ्ना प्रतिपालकको डर धारण गर्छन् तथा जुन व्यक्तिहरू (निर्णयको) घडीप्रति भयभित रहन्छन् ।

وَهَٰذَا ذِكْرٌ مُّبَارَكٌ أَنزَلْنَاهُ ۚ أَفَأَنتُمْ لَهُ مُنكِرُونَ ﴿٥٠﴾

५१. तथा यो (कुरान) एउटा मङ्गलमय स्मारक ग्रन्थ हो जसलाई हामीले अवतीर्ण गरेका हौं; के तिमीहरू यसलाई अस्वीकार गर्छौ त?

وَلَقَدْ آتَيْنَا إِبْرَاهِيمَ رُشْدَهُ مِن قَبْلُ وَكُنَّا بِهِ عَالِمِينَ ﴿٥١﴾

५२. तथा निश्चय नै (त्यस) अघि हामीले इब्राहिमलाई उनको मार्गदर्शन प्रदान गरेका थियौं तथा उनलाई हामी राम्ररी जान्दथ्यौं ।

إِذْ قَالَ لِأَبِيهِ وَقَوْمِهِ مَا هَٰذِهِ

५३. जब उनले आफ्ना पिता र आफ्ना मानिसहरूलाई भने, "जुन मूर्तिहरूप्रति

التَّمَاثِيْلُ الَّتِيٓ اَنْتُمْ لَهَا عٰكِفُوْنَ ﴿٥٣﴾

तिमीहरू समर्पित छौ तिनीहरू के हुन्?

قَالُوْا وَجَدْنَآ اٰبَآءَنَا لَهَا عٰبِدِيْنَ ﴿٥٤﴾

५४. तिनीहरूले भने, "हामीले हाम्रा पितृहरूलाई यिनीहरूको पूजा गर्दै आएको पायौं ।"

قَالَ لَقَدْ كُنْتُمْ اَنْتُمْ وَاٰبَآؤُكُمْ فِيْ ضَلٰلٍ مُّبِيْنٍ ﴿٥٥﴾

५५. उनले भने, "वस्तुतः तिमीहरू र तिमीहरूका पितृहरूसमेत सबै खुल्ला पथभ्रष्टतामा डुबेका थियौ ।

قَالُوْٓا اَجِئْتَنَا بِالْحَقِّ اَمْ اَنْتَ مِنَ اللّٰعِبِيْنَ ﴿٥٦﴾

५६. तिनीहरूले भने, "के तिमी जुन कुराका साथ हामी समक्ष आएका छौ त्यो (वास्तवमै) सत्य हो, अथवा तिमी हामीसित ख्याल ठट्टा गरिरहेछौ?"

قَالَ بَلْ رَّبُّكُمْ رَبُّ السَّمٰوٰتِ وَالْاَرْضِ الَّذِيْ فَطَرَهُنَّ ۖ وَاَنَا عَلٰى ذٰلِكُمْ مِّنَ الشّٰهِدِيْنَ ﴿٥٧﴾

५७. उनले भने, "होइन, अपितु तिमीहरूका प्रतिपालक त आकाशमण्डल र पृथ्वीका स्वामी हुन्, ती उनी नै जसले तिनीहरूको सृष्टि गरे; म यस कुराको साक्षी दिने व्यक्तिहरूमध्ये एक हुँ ।

وَتَاللّٰهِ لَاَكِيْدَنَّ اَصْنَامَكُمْ بَعْدَ اَنْ تُوَلُّوْا مُدْبِرِيْنَ ﴿٥٨﴾

५८. तथा अल्लाहको शपथ, तिमीहरूविमुख भएर (तथा) पिठ्यूँ देखाएर गएपछि म अवश्य तिमीहरूका मूर्तिहरूविरुद्ध योजना तयार गर्नेछु ।"

فَجَعَلَهُمْ جُذٰذًا اِلَّا كَبِيْرًا لَّهُمْ لَعَلَّهُمْ اِلَيْهِ يَرْجِعُوْنَ ﴿٥٩﴾

५९. अतः उनले तिनीहरूमधये एउटा ठूलो मूर्तिबाहेक ती (सबै) मूर्तिहरूलाई तोडेर टुक्रा टुक्रा पारिदिए, ताकि तिनीहरू (जानकारी लिनका निम्ति) फर्किएर आऊन्

قَالُوْا مَنْ فَعَلَ هٰذَا بِاٰلِهَتِنَآ اِنَّهٗ لَمِنَ الظّٰلِمِيْنَ ﴿٦٠﴾

६०. तिनीहरूले भने, "हाम्रा उपास्यहरूसित कसले यस्तो व्यवहार गर्‍यो? निश्चय नै त्यो व्यक्ति अत्याचारी रहेको छ ।"

قَالُوْا سَمِعْنَا فَتًى يَّذْكُرُهُمْ يُقَالُ لَهٗٓ اِبْرٰهِيْمُ ﴿٦١﴾

६१. तिनीहरूले भने, "हामीले इब्राहिम नाम गरेको एक युवकले तिनीहरूबारे

अपशब्द) बोलेको सुनेका थियौं.।"

६२. तिनीहरूले भने, "त्यसोभए त्यसलाई मानिसहरूका दृष्टिका सामुन्ने ल्याऊ ताकि तिनीहरूले साक्षी दिऊन् ।"

قَالُوا فَأْتُوا بِهِ عَلَىٰ أَعْيُنِ النَّاسِ لَعَلَّهُمْ يَشْهَدُونَ ﴿٦٢﴾

६३. त्यसपछि तिनीहरूले (इब्राहिमसित) भने, "ए इब्राहिम, के तिमीले नै हाम्रा उपास्यहरूसित त्यो व्यवहार गरेका हौ?"

قَالُوا أَأَنتَ فَعَلْتَ هَٰذَا بِآلِهَتِنَا يَا إِبْرَاهِيمُ ﴿٦٣﴾

६४. उनले उत्तर दिए, "सुन, कुनै न कुनै व्यक्तिले अवश्य त्यो कार्य गरेको हो । यहाँ (सन्दिग्ध) मुखिया खडा छ । अत: यदि तिनीहरू बोल्न सक्छन् भने तिनीहरूलाई नै सोध ।"*

قَالَ بَلْ فَعَلَهُ كَبِيرُهُمْ هَٰذَا فَاسْأَلُوهُمْ إِن كَانُوا يَنطِقُونَ ﴿٦٤﴾

---

* टिप्पणी: केही अनुवादकहरूले उक्त आयतको शाब्दिक अनुवादलाई त्यसले इब्राहिमलाई मिथ्यावादीस्वरूप प्रस्तुत गर्छ भनी त्यागेका छन् । निस्सन्देह त्यो ठूलो मूर्ति थिएन जसले सानाहरूलाई तोडेको थियो, अपितु ती स्वयम् इब्राहिम नै थिए जसले त्यो कार्य गरेका थिए । यसप्रकार "तिनीहरूको मुखिया यहाँ खडा छ" भन्ने उक्त बयानलाई इब्राहिमतर्फ समारोपन गरी त्यसका साथ इब्राहिममाथि एउटा स्पष्ट मिथ्या आरोप लगाउने प्रयास हो । ध्यान दिनयोग्य कुरो के हो भने, उक्त बयान गलत ता थिएन परन्तु त्यो एउटा शक्तिशाली तर्कशैली थियो । कहिलेकाहिँ एउटा कुरो हरेक व्यक्तिले स्पष्ट रूपमा विश्वास गर्न सकिने हुन्छ तथा अन्य व्यक्तिहरूलाई अल्मल्याउनका निम्ति गरेको सुनियोजित प्रयासस्वरूप त्यस्तो बयान कदापि अव्यक्त (अस्पष्ट) रहन सक्दैन परन्तु त्यसलाई कुनै समयको (परिस्थितिको) साधारण हास्य व्यङ्ग्यपूर्ण वर्णनस्वरूप लिइन सकिन्छ । इब्राहिमले तिनीहरूलाई अल्मल्याउने रतिभर आशय नराखी केवल एउटा शक्तिशाली तर्कद्वारा तिनीहरूको आस्थाको मिथ्यापनविरुद्ध उक्त उक्ति प्रस्तुत गरेका थिए भन्ने कुरा प्रति हाम्रो विश्वास रहेको छ । तिनीहरूले ठीक यसैप्रकार त्यसलाई लिएका थिए । इब्राहिमको कुरो सुनेर, तिनीहरूमध्ये कसैले पनि उनलाई मिथ्यावादी भनी उत्तर दिएका थिएनन् । अपितु पवित्र कुरान अनुसार तिनीहरूमाथि आफ्नो आस्थिक मूर्खतापनप्रति आत्मालोचना गर्न ठूलो दवाव परेको थियो । यो कुरो निम्नलिखित आयातहरूबाट स्पष्ट हुन्छ (हेर्नुहोस आयत नं. ६५ देखि ६७ सम्म) । पुन: त्यस घटना अघि नै स्वयम् इब्राहिमले सार्वजनिकरूपमा तिनीहरूको मूर्ति तोड्ने आफ्नो सङ्कल्प रहेको उल्लेख गरेका थिए भन्ने कुरा पनि स्मरण गर्न योग्य रहेको छ (हेर्नुहोस आयत नं.५८) ।

فَرَجَعُوْۤا اِلٰۤى اَنْفُسِهِمْ فَقَالُوْۤا اِنَّكُمْ اَنْتُمُ الظّٰلِمُوْنَ ﴿٦٥﴾

६५. त्यसपछि तिनीहरू एकअर्कातिर फर्किएर भन्न लागे, "तिमीहरू स्वयम् अत्याचारी रहेका छौ ।"

ثُمَّ نُكِسُوْا عَلٰى رُءُوْسِهِمْ ۚ لَقَدْ عَلِمْتَ مَا هٰۤؤُلَآءِ يَنْطِقُوْنَ ﴿٦٦﴾

६६. तथा (सरमले) तिनीहरूका शिर झुक्न पुगे (र तिनीहरूले भने), "तिनीहरूले बोल्न सक्दैनन् भनी तिमी निश्चयपूर्वक राम्ररी जान्दछौ ।"

قَالَ اَفَتَعْبُدُوْنَ مِنْ دُوْنِ اللّٰهِ مَا لَا يَنْفَعُكُمْ شَيْـًٔا وَّلَا يَضُرُّكُمْ ﴿٦٧﴾

६७. उनले भने, "त्यसोभए के तिमीहरू अल्लाहलाई छाडी यस्ता वस्तुहरूको उपासना गर्छौ जसले न तिमीहरूको कुनै लाभ गर्छ न त तिमीहरूको हानि नै?"

اُفٍّ لَّكُمْ وَلِمَا تَعْبُدُوْنَ مِنْ دُوْنِ اللّٰهِ ؕ اَفَلَا تَعْقِلُوْنَ ﴿٦٨﴾

६८. "तिमीहरूमाथि र अल्लालाई छाडी जसको तिमीहरूले उपासना गर्छौ तिनीहरूमाथि धिक्कार छ ! अत: के तिमीहरू बुझ्दैनौ त?"

قَالُوْا حَرِّقُوْهُ وَانْصُرُوْۤا اٰلِهَتَكُمْ اِنْ كُنْتُمْ فٰعِلِيْنَ ﴿٦٩﴾

६९. तिनीहरूले भने, "यदि तिमीहरूले (केही) गर्ने (नै) हो भने, त्यसलाई जलाऊ र आफ्ना उपास्यहरूको सहयोग गर ।"

قُلْنَا يٰنَارُ كُوْنِيْ بَرْدًا وَّسَلٰمًا عَلٰۤى اِبْرٰهِيْمَ ﴿٧٠﴾

७०. हामीले भन्यौं, "ए अग्नि, तिमी शीतल बन, तथा इब्राहिमका निम्ति शान्तिको साधनस्वरूप बन ।"

وَاَرَادُوْا بِهٖ كَيْدًا فَجَعَلْنٰهُمُ الْاَخْسَرِيْنَ ﴿٧١﴾

७१. तथा तिनीहरूले उनी विरूद्ध षडयन्त्र गर्न चाहे, परन्तु हामीले तिनीहरूलाई पूर्णरूपले असफल तुल्यायौं ।

وَنَجَّيْنٰهُ وَلُوْطًا اِلَى الْاَرْضِ الَّتِيْ بٰرَكْنَا فِيْهَا لِلْعٰلَمِيْنَ ﴿٧٢﴾

७२. तथा हामीले उनलाई र लूतलाई बचायौं (तथा तिनीहरूलाई) यस्तो स्थानमा (पुऱ्यायौं) जुन स्थानलाई मानिसहरूका निम्ति हामीले मङ्गलमय तुल्याएका थियौं

وَوَهَبْنَا لَهٗۤ اِسْحٰقَ ؕ وَيَعْقُوْبَ نَافِلَةً ؕ وَكُلًّا جَعَلْنَا صٰلِحِيْنَ ﴿٧٣﴾

७३. तथा उनलाई हामीले इस्हाक प्रदान गऱ्यौं, तथा नातिस्वरूप याकूब प्रदान गऱ्यौं तथा (तिनीहरू) सबैलाई हामीले

सत्यनिष्ठ बनायौं ।

وَ جَعَلْنٰهُمْ اَئِمَّةً يَّهْدُوْنَ بِاَمْرِنَا وَ اَوْحَيْنَآ اِلَيْهِمْ فِعْلَ الْخَيْرٰتِ وَ اِقَامَ الصَّلٰوةِ وَ اِيْتَآءَ الزَّكٰوةِ ۚ وَ كَانُوْا لَنَا عٰبِدِيْنَ ﴿٧٣﴾

७४. तथा तिनीहरूलाई हामीले धर्मगुरु बनायौं जसले हाम्रो आदेशद्वारा (मानिसहरूलाई) मार्ग देखाउँथें, तथा हामीले पुण्यकर्म गर्ने र नमाज अनुष्ठान गर्ने तथा जगात दिने (आदेशकासाथ) तिनीहरूतर्फ आकाशवाणी गऱ्यौं तथा तिनीहरू (केवल) हाम्रा उपासक थिए ।

وَلُوْطًا اٰتَيْنٰهُ حُكْمًا وَّ عِلْمًا وَّ نَجَّيْنٰهُ مِنَ الْقَرْيَةِ الَّتِيْ كَانَتْ تَّعْمَلُ الْخَبٰٓئِثَ ؕ اِنَّهُمْ كَانُوْا قَوْمَ سَوْءٍ فٰسِقِيْنَ ﴿٧٤﴾

७५. तथा लूतलाई हामीले निर्णयशक्ति र ज्ञान प्रदान गरेका थियौं । तथा उनलाई हामीले घृणित काममा लिप्त भएका (व्यक्ति)हरूको त्यस नगरबाट मुक्ति प्रदान गऱ्यौं । तिनीहरू निश्चितरूपमा दुष्कर्मी (र) विरुद्धाचारी मानिसहरू थिए ।

وَ اَدْخَلْنٰهُ فِيْ رَحْمَتِنَا ؕ اِنَّهٗ مِنَ الصّٰلِحِيْنَ ﴿٧٥﴾

७६. तथा उनलाई हामीले आफ्नो करुणामा दाखिल गऱ्यौं; निश्चय नै उनी एकजना धर्मनिष्ठ व्यक्ति थिए ।

وَنُوْحًا اِذْ نَادٰى مِنْ قَبْلُ فَاسْتَجَبْنَا لَهٗ فَنَجَّيْنٰهُ وَ اَهْلَهٗ مِنَ الْكَرْبِ الْعَظِيْمِ ﴿٧٦﴾

७७. तथा नूहलाई (स्मरण गर) जब उनले (हामीलाई) त्यसभन्दा अघि पुकारेका थिए, र हामीले उनको प्रार्थना सुनेर उनलाई र उनका परिवारलाई एउटा ठूलो कलेशबाट मुक्ति प्रदान गरेका थियौं ।

وَ نَصَرْنٰهُ مِنَ الْقَوْمِ الَّذِيْنَ كَذَّبُوْا بِاٰيٰتِنَا ؕ اِنَّهُمْ كَانُوْا قَوْمَ سَوْءٍ فَاَغْرَقْنٰهُمْ اَجْمَعِيْنَ ﴿٧٧﴾

७८. तथा जुन व्यक्तिहरूले हाम्रा चिह्नहरूलाई अस्वकिार गरेका थिए तिनीहरूविरुद्ध हामीले उनलाई सहयोग गऱ्यौं । तिनीहरू निश्चितरूपमा दुष्कर्मी व्यक्तिहरू थिए; त्यसकारण हामीले तिनीहरू सबैलाई डुबायौं ।

وَ دَاوٗدَ وَ سُلَيْمٰنَ اِذْ يَحْكُمٰنِ فِي الْحَرْثِ اِذْ نَفَشَتْ فِيْهِ غَنَمُ الْقَوْمِ ۚ وَ كُنَّا لِحُكْمِهِمْ شٰهِدِيْنَ ﴿٧٨﴾

७९. तथा दाऊद र सुलेमानलाई (स्मरण गर) जब तिनीहरू त्यस खेतीका सम्बन्धमा आफ्नो निर्णय सुनाउने कार्यमा व्यस्त थिए जुन खेतीमा केही

मानिसहरूका भेंडाहरू (रात्रिसमयमा) चरेका थिए; तथा तिनीहरूको निर्णयप्रति हामी साक्षी थियौं ।

فَفَهَّمۡنٰهَا سُلَيۡمٰنَ ۚ وَ كُلًّا اٰتَيۡنَا حُكۡمًا وَّ عِلۡمًا ۫ وَّ سَخَّرۡنَا مَعَ دَاوٗدَ الۡجِبَالَ يُسَبِّحۡنَ وَ الطَّيۡرَ ؕ وَ كُنَّا فٰعِلِيۡنَ ﴿۸۰﴾

८०. हामीले सुलेमानलाई (वास्तविक कुराको) समझ प्रदान गरेका थियौं । तथा तिनीहरू- मध्ये हरेकलाई हामीले निर्णयशक्ति र ज्ञान प्रदान गरेका थियौं । तथा पर्वतहरूलाई र पक्षीहरूलाई हामीले दाऊदसित मिलेर(प्रतिपालकको) गुणगान गर्ने कार्यमा लगाएका थियौं तथा (यस्ता सबै कार्यहरू) गर्न हामी सक्षम छौं

وَ عَلَّمۡنٰهُ صَنۡعَةَ لَبُوۡسٍ لَّكُمۡ لِتُحۡصِنَكُمۡ مِّنۡۢ بَاۡسِكُمۡ ۚ فَهَلۡ اَنۡتُمۡ شٰكِرُوۡنَ ﴿۸۱﴾

८१. तथा तिमीहरूका निम्ति बख्तरस्वरूप एकप्रकारको लिबास (कोट) बनाउन हामीले उनलाई सिकाएका थियौं, ताकि तिमीहरूको परस्पर लडाइँमा त्यसले तिमीहरूलाई सुरक्षा प्रदान गरोस् । अतः के तिमीहरू कृतज्ञ बन्छौ त?

وَلِسُلَيۡمٰنَ الرِّيۡحَ عَاصِفَةً تَجۡرِيۡ بِاَمۡرِهٖۤ اِلَى الۡاَرۡضِ الَّتِيۡ بٰرَكۡنَا فِيۡهَا ؕ وَكُنَّا بِكُلِّ شَيۡءٍ عٰلِمِيۡنَ ﴿۸۲﴾

८२. तथा तीव्र गतिमा चल्ने हावालाई (हामीले) सुलेमानका (अधीनमा गरिदिएका थियौं) । त्यो हावा हामीले मङ्गलमय तुल्याएको धर्तीतर्फ उनको आदेशानुसार चल्ने गर्थ्यो । तथा सम्पूर्ण कुराको हामीलाई ज्ञान प्राप्त छ ।

وَمِنَ الشَّيٰطِيۡنِ مَنۡ يَّغُوۡصُوۡنَ لَهٗ وَ يَعۡمَلُوۡنَ عَمَلًا دُوۡنَ ذٰلِكَ ۚ وَكُنَّا لَهُمۡ حٰفِظِيۡنَ ﴿۸۳﴾

८३. तथा (हामीले) सैतानसदृश -बलवान )हरूलाई (उनका अधीनस्थ गरेका थियौं) जसले उनका निम्ति गोता लगाउने गर्थे र त्यसबाहेक अन्यान्य कार्यहरू पनि गर्ने गर्थे; तथा हामी नै तिनीहरूको संरक्षण गर्ने गर्थ्यौं ।

وَاَيُّوۡبَ اِذۡ نَادٰى رَبَّهٗۤ اَنِّيۡ مَسَّنِيَ الضُّرُّ وَاَنۡتَ اَرۡحَمُ الرّٰحِمِيۡنَ ﴿۸۴﴾

८४. तथा अय्यूब (जोब) लाई (स्मरण गर) जब उनले आफ्ना प्रतिपालकलाई (के भन्दै) पुकारेको थिए (भने), "मलाई सङ्कटले घेरेको छ, तथा हे मेरा

प्रतिपालक, तिमी नै सबै दया गर्नेहरूभन्दा सर्वाधिक दयालु रहेका छौ ।"

८५. अतः हामीले उनको प्रार्थना सुन्यौं र उनलाई जुन सङ्कटले घेरेको थियो त्यसलाई उनीबाट हटायौं, तथा उनलाई उनको परिवार प्रदान गऱ्यौं र हाम्रो तर्फबाट करुणास्वरूप तिनीहरूसितै अन्यान्य (नातेदारहरू) पनि प्रदान गऱ्यौं, तथा (यो घटना) उपासकहरूका निम्ति एउटा स्मारिकास्वरूप रहेको छ ।

فَاسْتَجَبْنَا لَهُ فَكَشَفْنَا مَا بِهِ مِنْ ضُرٍّ وَآتَيْنَاهُ أَهْلَهُ وَمِثْلَهُمْ مَعَهُمْ رَحْمَةً مِنْ عِنْدِنَا وَذِكْرَىٰ لِلْعَابِدِينَ ﴿٨٤﴾

८६. तथा इस्माईल र इद्रिस् तथा जोल-किफल्लाई (स्मरण गर) । तिनीहरू सबै धैर्यधारी थिए ।

وَإِسْمَاعِيلَ وَإِدْرِيسَ وَذَا الْكِفْلِ ۖ كُلٌّ مِنَ الصَّابِرِينَ ﴿٨٥﴾

८७. तथा तिनीहरूलाई हामीले आफ्नो करुणाअन्तर्गत गऱ्यौं। निश्चय नै तिनीहरू सबै पुण्यकर्मी व्यक्तिहरू थिए ।

وَأَدْخَلْنَاهُمْ فِي رَحْمَتِنَا ۖ إِنَّهُمْ مِنَ الصَّالِحِينَ ﴿٨٦﴾

८८. तथा जूल-नूनलाई (स्मरण गर), जब उनी क्रोधका साथ निस्किएर गए तथा हामीले उनलाई ठूलो कष्ट दिनेछैनौं भन्ने उनको सोचाइ थियो तथा घोर अन्धकारबाट उनले (के भन्दै) पुकारे, (भने), "हे प्रतिपालक तिमीबाहेक अन्य कोही उपास्य छैन, तिमी पवित्र छौ । म निश्चयपूर्वक अत्याचारीहरूमध्येको (एक) थिएँ ।"

وَذَا النُّونِ إِذْ ذَهَبَ مُغَاضِبًا فَظَنَّ أَنْ لَنْ نَقْدِرَ عَلَيْهِ فَنَادَىٰ فِي الظُّلُمَاتِ أَنْ لَا إِلَٰهَ إِلَّا أَنْتَ سُبْحَانَكَ إِنِّي كُنْتُ مِنَ الظَّالِمِينَ ﴿٨٧﴾

८९. अतः हामीले उनको प्रार्थना सुन्यौं तथा उनलाई चिन्ताबाट मुक्ति प्रदान गऱ्यौं । तथा विश्वासीजनहरूलाई यसैप्रकार हामी मुक्ति प्रदान गर्ने गर्छौं ।

فَاسْتَجَبْنَا لَهُ وَنَجَّيْنَاهُ مِنَ الْغَمِّ ۚ وَكَذَٰلِكَ نُنْجِي الْمُؤْمِنِينَ ﴿٨٨﴾

९०. तथा जकरियालाई (स्मरण गर) जब उनले (के भन्दै) आफ्ना प्रतिपालकलाई पुकारे (भने), "हे मेरा प्रतिपालक, मलाई

وَزَكَرِيَّا إِذْ نَادَىٰ رَبَّهُ رَبِّ لَا تَذَرْنِي فَرْدًا وَأَنْتَ خَيْرُ الْوَارِثِينَ ﴿٨٩﴾

सन्तानहीन नछाड, तथा तिमी नै सर्वोत्कृष्ट उत्तराधिकारी रहेका छौ।"

فَاسْتَجَبْنَا لَهٗ ز وَوَهَبْنَا لَهٗ يَحْيٰى وَاَصْلَحْنَا لَهٗ زَوْجَهٗ ط اِنَّهُمْ كَانُوْا يُسٰرِعُوْنَ فِى الْخَيْرٰتِ وَيَدْعُوْنَنَا رَغَبًا وَّرَهَبًا ط وَكَانُوْا لَنَا خٰشِعِيْنَ ﴿٩١﴾

९१. अतः हामीले उनको प्रार्थना सुन्यौं र उनलाई यह्या (जोन) प्रदान गर्‍यौं तथा उनका निम्ति उनकी पत्नीलाई स्वास्थ्य प्रदान गर्‍यौं तिनीहरू पुण्यकार्यमा परस्पर अघि बढ्ने गर्थे तथा आशा र भयका साथ हामीलाई पुकार्ने गर्थे, तथा हाम्रा सामुन्ने तिनीहरू नम्रतापूर्वक झुक्ने गर्थे ।

وَالَّتِيْٓ اَحْصَنَتْ فَرْجَهَا فَنَفَخْنَا فِيْهَا مِنْ رُّوْحِنَا وَ جَعَلْنٰهَا وَ ابْنَهَآ اٰيَةً لِّلْعٰلَمِيْنَ ﴿٩٢﴾

९२. तथा ती -महिलालाई स्मरण गर) जसले आफ्नो सतीत्वको सुरक्षा गरेकी थिइन्; त्यसकारण हामीले उनीभित्र आफ्नो वाणी निश्वास गर्‍यौं तथा उनलाई र उनका पुत्रलाई हामीले मानिसहरूका निम्ति एउटा चिह्न बनायौं ।

اِنَّ هٰذِهٖٓ اُمَّتُكُمْ اُمَّةً وَّاحِدَةً ز صلے وَّاَنَا رَبُّكُمْ فَاعْبُدُوْنِ ﴿٩٣﴾

९३. वस्तुतः यी तिमीहरूको जाति एउटै जाति हो; तथा म तिमीहरूको प्रतिपालक हुँ, त्यसकारण मेरो उपासना गर ।

وَ تَقَطَّعُوْٓا اَمْرَهُمْ بَيْنَهُمْ ط كُلٌّ اِلَيْنَا رٰجِعُوْنَ ﴿٩٤﴾

९४. परन्तु आ-आफ्नो मामिलालाई लिएर तिनीहरू परस्पर विभाजित भएका छन् तथा सबै हामीतर्फै फर्कने छन् ।

فَمَنْ يَّعْمَلْ مِنَ الصّٰلِحٰتِ وَ هُوَ مُؤْمِنٌ فَلَا كُفْرَانَ لِسَعْيِهٖ ج وَاِنَّا لَهٗ كٰتِبُوْنَ ﴿٩٥﴾

९५. अतः जसले पुण्यकार्य गर्छ र विश्वासी रहन्छ, उसको प्रचेष्टालाई प्रशंसा नगरी छाडिने छैन तथा त्यसलाई हामी अवश्य लिपिवद्ध गरेर राख्नेछौं ।

وَحَرٰمٌ عَلٰى قَرْيَةٍ اَهْلَكْنٰهَآ اَنَّهُمْ لَا يَرْجِعُوْنَ ﴿٩٦﴾

९६. तथा त्यस नगरका निम्ति जसको हामीले विनाश गरेका छौं तिनीहरू त्यसतर्फ फर्किने छैनन् भनी अटुट विधान रहेको छ ।

حَتّٰىٓ اِذَا فُتِحَتْ يَاْجُوْجُ وَمَاْجُوْجُ وَهُمْ مِّنْ كُلِّ حَدَبٍ يَّنْسِلُوْنَ ﴿٩٧﴾

९७. (यो यसैप्रकार हुनेछ) अतः जब याजूज र माजूजलाई बन्धनमुक्त गरिनेछ तथा तिनीहरू हरेक उच्चस्थानबाट दगुर्दै

अघि बढ्नेछन् ।

९८. तथा सत्यप्रतिश्रुति निकट आउनेछ; तब सुन, अविश्वासीहरूका नेत्रहरू खुलाका-खुला रहने छन् (तथा तिनीहरूले भन्नेछन्), हामीमाथि धिक्कार ! वास्तवमा यसबारे हामी पर्वाह गर्दैनथ्यौं; होइन, (अपितु) हामी अत्याचारी थियौं ।

وَاقْتَرَبَ الْوَعْدُ الْحَقُّ فَإِذَا هِيَ شَاخِصَةٌ أَبْصَارُ الَّذِينَ كَفَرُوا ۖ يَا وَيْلَنَا قَدْ كُنَّا فِي غَفْلَةٍ مِّنْ هَٰذَا بَلْ كُنَّا ظَالِمِينَ ﴿٩٧﴾

९९. "तिमीहरू र अल्लाहलाई छाडी तिमीहरूले उपासना गर्ने गरेका ती वस्तुहरू नर्कका इन्धन रहेका छौ । त्यसैमा तिमीहरू (सबै) प्रवेश गर्नेछौ ।

إِنَّكُمْ وَمَا تَعْبُدُونَ مِن دُونِ اللَّهِ حَصَبُ جَهَنَّمَ ۖ أَنتُمْ لَهَا وَارِدُونَ ﴿٩٨﴾

१००. यदि तिनीहरू वास्तविक उपास्य रहेका भए त तिनीहरू त्यसमा दाखिल हुने नै थिएनन्; तथा तिनीहरू सबै त्यहाँ रहनेछन् ।

لَوْ كَانَ هَٰؤُلَاءِ آلِهَةً مَّا وَرَدُوهَا ۖ وَكُلٌّ فِيهَا خَالِدُونَ ﴿٩٩﴾

१०१. त्यहाँ चिच्याउनु नै तिनीहरूको (नियति) हुनेछ, तथा त्यहाँ तिनीहरूले (अरू कुनै कुरा) सुन्नेछैनन् ।

لَهُمْ فِيهَا زَفِيرٌ وَهُمْ فِيهَا لَا يَسْمَعُونَ ﴿١٠٠﴾

१०२. (परन्तु) जसका निम्ति हाम्रातर्फबाट प्रतिदान (को प्रतिश्रुति) भइसकेको छ, तिनीहरूलाई भने त्यस (अग्नि)बाट टाढा राखिनेछ ।

إِنَّ الَّذِينَ سَبَقَتْ لَهُم مِّنَّا الْحُسْنَىٰ أُولَٰئِكَ عَنْهَا مُبْعَدُونَ ﴿١٠١﴾

१०३. तिनीहरूले त्यसको मधुरो ध्वनिसमेत सुन्नेछैनन्; तथा तिनीहरू आफ्ना आत्माले चाहेको (ठाउँ)मा रहनेछन्

لَا يَسْمَعُونَ حَسِيسَهَا ۖ وَهُمْ فِي مَا اشْتَهَتْ أَنفُسُهُمْ خَالِدُونَ ﴿١٠٢﴾

१०४. ठूलो त्रासले (पनि) तिनीहरूलाई दुखित तुल्याउनेछैन, तथा देवदूतहरूले (के भन्दै) तिनीहरूसित भेट गर्नेछन् (भने), "यो त्यही तिमीहरूको दिन हो, जसबारे तिमीहरूसित वाचा गरिएको थियो ।"

لَا يَحْزُنُهُمُ الْفَزَعُ الْأَكْبَرُ وَتَتَلَقَّاهُمُ الْمَلَائِكَةُ هَٰذَا يَوْمُكُمُ الَّذِي كُنتُمْ تُوعَدُونَ ﴿١٠٣﴾

१०५. त्यस दिन(को स्मरण गर) जब हामी आकाशमण्डललाई लिपिवद्ध गरिएको - कागज)लाई बहीले बेरे झैं बेर्नेछौं । जसरी हामीले पहिलो सृष्टि प्रारम्भ गरेका थियौं, त्यसरी नै त्यसलाई हामी दोहोऱ्याउने छौं- यो हामीले स्वयम्‌माथि (अनिवार्य गरेको) एउटा वचन हो; हामी अवश्य (त्यसलाई) पूर्ण गरेरै छाड्नेछौं ।

يَوْمَ نَطْوِي السَّمَآءَ كَطَيِّ السِّجِلِّ لِلْكُتُبِ ۚ كَمَا بَدَاْنَآ اَوَّلَ خَلْقٍ نُّعِيْدُهٗ ۚ وَعْدًا عَلَيْنَا ۚ اِنَّا كُنَّا فٰعِلِيْنَ ﴿١٠٤﴾

१०६. तथा निश्चय नै हामीले पहिला नै केही उपदेशपश्चात् दाऊदको ज़बूर (धार्मिक गीत)मा मेरा धर्मनिष्ठ भृत्यहरू नै त्यस पृथ्वीका उत्तराधिकारी बन्नेछन् भनी लेखिदिएका छौं

وَلَقَدْ كَتَبْنَا فِي الزَّبُوْرِ مِنْۢ بَعْدِ الذِّكْرِ اَنَّ الْاَرْضَ يَرِثُهَا عِبَادِيَ الصّٰلِحُوْنَ ﴿١٠٥﴾

१०७. जसले प्रतिपालकको उपासना गर्ने गर्छन् ती व्यक्तिहरूका निम्ति यस कुरामा निश्चयपूर्वक एउटा महत्त्वपूर्ण सन्देश रहेको छ ।

اِنَّ فِيْ هٰذَا لَبَلٰغًا لِّقَوْمٍ عٰبِدِيْنَ ﴿١٠٦﴾

१०८. तथा हामीले तिमीलाई सम्पूर्ण मानवजातिका निम्ति केवल एक करुणास्वरूप पठाएका हौं ।

وَمَآ اَرْسَلْنٰكَ اِلَّا رَحْمَةً لِّلْعٰلَمِيْنَ ﴿١٠٧﴾

१०९. तिमी भन, "निश्चय नै तिमीहरूका उपास्य केवल एकमात्र उपास्या हुन् भनी ममाथि आकाशवाणी गरिएको छ । अतः के तिमीहरू आज्ञाकारी बन्छौ त?"

قُلْ اِنَّمَا يُوْحٰٓى اِلَيَّ اَنَّمَآ اِلٰهُكُمْ اِلٰهٌ وَّاحِدٌ ۚ فَهَلْ اَنْتُمْ مُّسْلِمُوْنَ ﴿١٠٨﴾

११०. परन्तु यदि तिनीहरू विमुख भएमा, तिमी भन, "मैले तिमीहरू सबैलाई एक समानरूपमा सतर्क गरिदिएको छु तथा जुन कुराको तिमीहरूलाई वचन दिइएको छ त्यो कुरा निकट छ अथवा टाढा मलाई त्यसबारे थाहा छैन ।

فَاِنْ تَوَلَّوْا فَقُلْ اٰذَنْتُكُمْ عَلٰى سَوَآءٍ ۚ وَاِنْ اَدْرِيْٓ اَقَرِيْبٌ اَمْ بَعِيْدٌ مَّا تُوْعَدُوْنَ ﴿١٠٩﴾

१११. वस्तुतः प्रकाश्यरूपमा बोलिएका कुरालाई उनले जान्दछन्, तथा त्यस

اِنَّهٗ يَعْلَمُ الْجَهْرَ مِنَ الْقَوْلِ وَيَعْلَمُ مَا تَكْتُمُوْنَ ﴿١١٠﴾

कुरालाई पनि जान्छन्, जुनकुरा तिमीहरू लुकाउँछौ ।

وَ اِنْ اَدْرِيْ لَعَلَّهٗ فِتْنَةٌ لَّكُمْ وَ مَتَاعٌ اِلٰى حِيْنٍ ﴿١١١﴾

१११. सम्भवत: त्यो तिमीहरूका निम्ति एउटा परीक्षा हुनसक्छ, तथा केवल केही समयका निम्ति एउटा आनन्द उपभोग(को साधन) हुनसक्छ भन्ने कुरा म जान्दिन ।"

قٰلَ رَبِّ احْكُمْ بِالْحَقِّ ۭ وَ رَبُّنَا الرَّحْمٰنُ الْمُسْتَعَانُ عَلٰى مَا تَصِفُوْنَ ﴿١١٢﴾

११२. उनले (यसो पनि) भने, "हे मेरा प्रतिपालक, तिमी सत्यका साथ निर्णय गर । हाम्रा प्रतिपालक त कृपालु (प्रतिपालक) रहेका छन् । तिमीहरूले गर्ने गरेका कुराहरूविरुद्ध उनकै सहयोग मागिन्छ ।"

سُوْرَةُ الْحَجِّ مَدَنِيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ تِسْعٌ وَّسَبْعُوْنَ اٰيَةً وَّعَشَرَةُ رُكُوْعَاتٍ

## अल्-हज्ज
(हिजरतपछि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

يٰۤاَيُّهَا النَّاسُ اتَّقُوْا رَبَّكُمْ ۚ اِنَّ زَلْزَلَةَ السَّاعَةِ شَيْءٌ عَظِيْمٌ ②

२. ए मानिसहरू हो, आफ्ना प्रतिपालकसित डराऊ; निश्चय नै निर्धारित घडीको कम्पन अति भयानक वस्तु रहेको छ–

يَوْمَ تَرَوْنَهَا تَذْهَلُ كُلُّ مُرْضِعَةٍ عَمَّاۤ اَرْضَعَتْ وَتَضَعُ كُلُّ ذَاتِ حَمْلٍ حَمْلَهَا وَتَرَى النَّاسَ سُكٰرٰى وَمَا هُمْ بِسُكٰرٰى وَلٰكِنَّ عَذَابَ اللّٰهِ شَدِيْدٌ ③

३. जुन दिन तिमीहरूले त्यसलाई देख्नेछौ, (तब) हरेक दूध पियाउने मातृले आफ्नो दूध पिउने (बालक)लाई बिर्सनेछे तथा हरेक गर्भवती स्त्रीजातिले आफ्नो गर्भ गिराउनेछे; तथा मानिसहरूलाई तिमीहरूले मदमत्तस्वरूप देख्नेछौ वस्तुत: तिनीहरू मदमत्त भने हुँदैनन्, परन्तु अल्लाहको दण्ड अति कठोर हुनेछ ।

وَمِنَ النَّاسِ مَنْ يُّجَادِلُ فِى اللّٰهِ بِغَيْرِ عِلْمٍ وَّيَتَّبِعُ كُلَّ شَيْطٰنٍ مَّرِيْدٍ ④

४. तथा मानिसहरूमध्ये केही यस्ता व्यक्तिहरू पनि हुन्छन् जो वास्तविक ज्ञानबिना नै अल्लाहका सम्बन्धमा तर्क वितर्क गर्छन्, तथा हरेक विद्रोही सैतानको अनुसरण गर्छन् ।

كُتِبَ عَلَيْهِ اَنَّهٗ مَنْ تَوَلَّاهُ فَاَنَّهٗ يُضِلُّهٗ وَيَهْدِيْهِ اِلٰى عَذَابِ السَّعِيْرِ ⑤

५. वस्तुत: जसले त्यससित मित्रता गर्छ त्यसका सम्बन्धमा के निर्णय भइसकेको छ भने, त्यसलाई उसले पथभ्रष्ट तुल्याउनेछ तथा उसलाई अग्निको दण्डतर्फ लिएर जानेछ ।

يٰۤاَيُّهَا النَّاسُ اِنْ كُنْتُمْ فِيْ رَيْبٍ مِّنَ الْبَعْثِ فَاِنَّا خَلَقْنٰكُمْ مِّنْ تُرَابٍ ثُمَّ مِنْ نُّطْفَةٍ ثُمَّ مِنْ عَلَقَةٍ ثُمَّ مِنْ مُّضْغَةٍ مُّخَلَّقَةٍ وَّغَيْرِ مُخَلَّقَةٍ

६. ए मानिसहरू हो, यदि पुनरुत्थानका सम्बन्धमा तिमीहरूलाई सन्देह रहेको भएमा (के स्मरण राख भने) हामीले तिमीहरूलाई माटोबाट सिर्जना गरेका हौं, त्यसपछि एउटा वीर्यको थोपोबाट, पुन: पिण्डित रक्तबाट,

لِّنُبَيِّنَ لَكُمْ ۚ وَنُقِرُّ فِي الْأَرْحَامِ مَا نَشَاءُ إِلَىٰ أَجَلٍ مُّسَمًّى ثُمَّ نُخْرِجُكُمْ طِفْلًا ثُمَّ لِتَبْلُغُوا أَشُدَّكُمْ ۖ وَمِنكُم مَّن يُتَوَفَّىٰ وَمِنكُم مَّن يُرَدُّ إِلَىٰ أَرْذَلِ الْعُمُرِ لِكَيْلَا يَعْلَمَ مِن بَعْدِ عِلْمٍ شَيْئًا ۚ وَتَرَى الْأَرْضَ هَامِدَةً فَإِذَا أَنزَلْنَا عَلَيْهَا الْمَاءَ اهْتَزَّتْ وَرَبَتْ وَأَنبَتَتْ مِن كُلِّ زَوْجٍ بَهِيجٍ ۝

त्यसपछि कहिले पूर्ण हुने र कहिले चाहिँ पूर्ण नहुने मासुको टुक्रोबाट ताकि त्यसद्वारा हामी तिमीहरूसमक्ष (आफ्नो शक्ति) प्रकट गर्न सकौं । तथा जुन (वस्तु)लाई चाहन्छौं त्यसलाई हामी एउटा निर्धारित म्यादसम्म गर्भमा कायम राख्छौं; त्यसपछि हामीले तिमीहरूलाई बालकस्वरूप बाहिर निकालेका हौं; ताकि (त्यसपछि) तिमीहरू आफ्नो पूर्ण परिपक्वताको उमेरलाई प्राप्त गर । तथा तिमीहरूमध्ये यस्ता व्यक्तिहरू छन् जसले मृत्यु प्राप्त गर्छन् तथा अन्य यस्ता व्यक्तिहरू पनि हुन्छन् जसलाईचाहिँ वयोवृद्धताको उमेरतर्फ फर्काइन्छ* (फलस्वरूप) तिनीहरू धेरै ज्ञान (प्राप्त गरे) पश्चात् (पुनः) पूर्णरूपमा ज्ञानरहित हुन पुग्छन् । तथा तिमी पृथ्वीलाई जीवनरहित देख्छौं, परन्तु जब हामी त्यसमाथि पानी अवतीर्ण गर्छौं, (तब) त्यो लहलहाउन र फुल्न लाग्छ, तथा हरेक प्रकारका सुन्दरतम वनस्पतिहरू उब्जाउँछ ।

ذَٰلِكَ بِأَنَّ اللَّهَ هُوَ الْحَقُّ وَأَنَّهُ يُحْيِي الْمَوْتَىٰ وَأَنَّهُ عَلَىٰ كُلِّ شَيْءٍ قَدِيرٌ ۝

७. यस्तो किन हुन जान्छ भने अल्लाह नै परम सत्य हुन्, तथा जसले मृतः वस्तुलाई जीवित गर्छन् ती पनि उनी नै हुन्, तथा सम्पूर्ण कुराहरूमाथि उनको पूर्ण शक्ति कायम छ ।

وَأَنَّ السَّاعَةَ آتِيَةٌ لَّا رَيْبَ فِيهَا وَأَنَّ اللَّهَ يَبْعَثُ مَن فِي الْقُبُورِ ۝

८. तथा निर्धारित घडी (अवश्य) आउनेछ, यसमा कुनै सन्देह छैन, तथा यसैप्रकार जुन व्यक्तिहरू चिहानमा छन् तिनीहरूलाई अल्लाहले अवश्य ब्यूँझाउने छन् ।

وَمِنَ النَّاسِ مَن يُجَادِلُ فِي اللَّهِ بِغَيْرِ عِلْمٍ وَلَا هُدًى وَلَا كِتَابٍ

९. तथा मानिसहरूमध्ये केही यस्ता व्यक्तिहरू पनि छन् जो वास्तविक ज्ञान

---

* "फर्काइन्छ" शब्दले जसरी एउटा बालक प्रारम्भकालमा आफ्नो हेरचाह गर्न असहाय र असमर्थ हुन्छ त्यसै गरी एउटा व्यक्ति वयोवृद्धकालमा त्यही अवस्थातर्फ फर्किन्छ भन्ने कुरोतर्फ सङ्केत गर्छ । यस भावार्थको समर्थन आयत (यासिन् परिच्छेद ३६ आयत ६९) ले गर्छ ।

مُّنِيرٍ ⑧

तथा मार्गदर्शन र कुनै प्रकाशप्रदायी पुस्तकबिना नै अल्लाहका सम्बन्धमा विवाद गर्छन्,

ثَانِيَ عِطْفِهِ لِيُضِلَّ عَنْ سَبِيلِ اللَّهِ ۖ لَهُ فِي الدُّنْيَا خِزْيٌ ۖ وَنُذِيقُهُ يَوْمَ الْقِيَامَةِ عَذَابَ الْحَرِيقِ ⑨

१०. (अहङ्कारका साथ) आफ्नो काँध मर्काउँदै (हिड्छ) ताकि उसले (मानिसहरूलाई) अल्लाहको मार्गबाट पथभ्रष्ट तुल्याउन सकोस् । उसका लागि यस संसारमा लाञ्छना ता छँदैछ, पुनरुत्थानका दिन हामी उसलाई जलाउने दण्डको स्वाद चखाउनेछौं ।

ذَٰلِكَ بِمَا قَدَّمَتْ يَدَاكَ وَأَنَّ اللَّهَ لَيْسَ بِظَلَّامٍ لِلْعَبِيدِ ⑩

११. यो तिम्रा हातले अघि पठाएको (कर्म)को कारण भएको हो, तथा अल्लाह (आफ्ना) भृत्यहरूप्रति कदापि अत्याचार गर्दैनन् ।

وَمِنَ النَّاسِ مَنْ يَعْبُدُ اللَّهَ عَلَىٰ حَرْفٍ ۖ فَإِنْ أَصَابَهُ خَيْرٌ اطْمَأَنَّ بِهِ ۖ وَإِنْ أَصَابَتْهُ فِتْنَةٌ انْقَلَبَ عَلَىٰ وَجْهِهِ خَسِرَ الدُّنْيَا وَالْآخِرَةَ ۚ ذَٰلِكَ هُوَ الْخُسْرَانُ الْمُبِينُ ⑪

१२. तथा मानिसहरूमध्ये यस्तो व्यक्ति पनि हुन्छ जसले विश्वासको अन्तिम सिमानामा उभिएर अल्लाहको उपासना गर्छ । अत: यदि उसलाई मङ्गल प्राप्त भएमा, त्यसप्रति त्यो व्यक्ति प्रसन्न हुन्छ; तथा यदि उसलाई कुनै सङ्कट आइपरेमा, त्यो (व्यक्ति अल्लाहबाट) विमुख हुन्छ । उसले यस संसारमा घाटा उठाउँछ, त्यसैगरी परलोकमा पनि । तथा त्यो एउटा प्रत्यक्ष घाटा रहेको छ ।

يَدْعُو مِنْ دُونِ اللَّهِ مَا لَا يَضُرُّهُ وَمَا لَا يَنْفَعُهُ ۚ ذَٰلِكَ هُوَ الضَّلَالُ الْبَعِيدُ ⑫

१३. त्यो व्यक्ति अल्लाहलाई छाडी त्यस वस्तुलाई पुकार्छ जसले न उसको हानि गर्नसक्छ न त लाभ नै पुऱ्याउन सक्छ । यही नै सुदूर (पुऱ्याउने) पथभ्रष्टता रहेको छ

يَدْعُو لَمَنْ ضَرُّهُ أَقْرَبُ مِنْ نَفْعِهِ ۚ لَبِئْسَ الْمَوْلَىٰ وَلَبِئْسَ الْعَشِيرُ ⑬

१४. उसले त्यसलाई पुकार्छ जसबाट लाभभन्दा हानिको सम्भावना अधिक रहेको छ । त्यो संरक्षकस्वरूप अति निकृष्ट रहेको छ भने सहयोगीस्वरूप (पनि) अति निकृष्ट रहेको छ ।

إِنَّ اللَّهَ يُدْخِلُ الَّذِينَ آمَنُوا وَ

१५. नि:सन्देह, अल्लाहले ती विश्वासी

عَمِلُوا الصّٰلِحٰتِ جَنّٰتٍ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ ۭ اِنَّ اللّٰهَ يَفْعَلُ مَا يُرِيْدُ ﴿١٥﴾

तथा पुण्यकार्य गर्ने व्यक्तिहरूलाई बगैंचाहरूमा दाखिल गर्नेछन् जसमनि नदीहरू बग्छन्; अल्लाहलाई जे इच्छा लाग्छ निश्चय नै उनले त्यही (कार्य) गर्छन् ।

مَنْ كَانَ يَظُنُّ اَنْ لَّنْ يَّنْصُرَهُ اللّٰهُ فِي الدُّنْيَا وَالْاٰخِرَةِ فَلْيَمْدُدْ بِسَبَبٍ اِلَى السَّمَاۗءِ ثُمَّ لْيَقْطَعْ فَلْيَنْظُرْ هَلْ يُذْهِبَنَّ كَيْدُهٗ مَا يَغِيْظُ ﴿١٦﴾

१६. अल्लाहले उनी (नबी)लाई यस संसारमा र परलोकमा सहयोग गर्ने छैनन् भनी जसले ठान्छ, (यदि त्यसमा सामर्थ्य रहेमा) त्यसले आकाशमा जाने कुनै मार्ग पहिल्याओस् र (ईश्वरीय सहयोगलाई) विच्छिन्न तुल्याओस् । त्यसपछि जुन कुराले (उसलाई) क्रोधित तुल्याइरहेछ त्यस कुरालाई उसको योजनाले पन्छाउन सक्छ वा सक्दैन भनी हेरोस् ।

وَكَذٰلِكَ اَنْزَلْنٰهُ اٰيٰتٍۢ بَيِّنٰتٍ ۙ وَّاَنَّ اللّٰهَ يَهْدِيْ مَنْ يُّرِيْدُ ﴿١٧﴾

१७. तथा यसै प्रकार हामीले यस (कुरान)लाई स्पष्ट चिह्नस्वरूप अवतीर्ण गरेका छौं, तथा अल्लाहले जसलाई इच्छा गर्छन् निश्चयपूर्वक उसलाई सन्मार्ग देखाउँछन् ।

اِنَّ الَّذِيْنَ اٰمَنُوْا وَالَّذِيْنَ هَادُوْا وَالصّٰبِـِٕيْنَ وَالنَّصٰرٰى وَالْمَجُوْسَ وَالَّذِيْنَ اَشْرَكُوْٓا ڰ اِنَّ اللّٰهَ يَفْصِلُ بَيْنَهُمْ يَوْمَ الْقِيٰمَةِ ۭ اِنَّ اللّٰهَ عَلٰي كُلِّ شَيْءٍ شَهِيْدٌ ﴿١٨﴾

१८. वस्तुतः ती व्यक्तिहरू जसले विश्वास स्थापना गरे, तथा यहुदीहरू र साबीहरू तथा इसाईहरू र मजूसीहरू तथा मूर्ति पूजकहरू, यी सबैका बीच अल्लाहले अवश्य पुनरुत्थानका दिन निर्णय गर्नेछन्; अल्लाह निश्चयपूर्वक सबै कुराहरूमाथि साक्षी रहेका छन् ।

اَلَمْ تَرَ اَنَّ اللّٰهَ يَسْجُدُ لَهٗ مَنْ فِي السَّمٰوٰتِ وَمَنْ فِي الْاَرْضِ وَالشَّمْسُ وَالْقَمَرُ وَالنُّجُوْمُ وَالْجِبَالُ وَالشَّجَرُ وَالدَّوَاۗبُّ وَكَثِيْرٌ مِّنَ النَّاسِ ۭ وَكَثِيْرٌ حَقَّ عَلَيْهِ الْعَذَابُ ۭ وَمَنْ يُّهِنِ اللّٰهُ فَمَا لَهٗ مِنْ مُّكْرِمٍ ۭ اِنَّ اللّٰهَ يَفْعَلُ مَا يَشَاۗءُ ﴿١٩﴾ ۩

१९. आकाशमण्डलमा रहेका तथा पृथ्वीमा रहेका सबै (वस्तुहरू)ले तथा सूर्य र चन्द्रले तथा ताराहरूले तथा पर्वतहरूले, वृक्षहरूले तथा चौपायहरूले र मानिसहरूमध्ये धेरैले अल्लाहलाई साष्टाङग दण्डवत गर्छन् भनी तिमीले देखेका छैनौ र? परन्तु धेरै व्यक्तिहरू भने दण्ड पाउनयोग्य हुन पुगेका छन् । तथा अल्लाहले जसलाई लाञ्छित तुल्याउँछन् त्यसलाई कसैले सम्मान प्रदान गर्न सक्दैन । वस्तुतः अल्लाहले जे चाहन्छन्

त्यही गर्छन् ।

هَٰذَانِ خَصْمَانِ اخْتَصَمُوا فِي رَبِّهِمْ ۖ فَالَّذِينَ كَفَرُوا قُطِّعَتْ لَهُمْ ثِيَابٌ مِّن نَّارٍ يُصَبُّ مِن فَوْقِ رُءُوسِهِمُ الْحَمِيمُ ﴿٢٠﴾

२०. यी दुई परस्पर विवाद गर्ने समूहहरू तिनीहरूका प्रतिपालकका सम्बन्धमा विवाद गरिरहेछन् । जुन व्यक्तिहरू अविश्वासी छन् तिनीहरूका निम्ति भने अग्निको लिबास तयार गरिनेछ; (तथा) तिनीहरूका टाउकामा उम्लदै गरेको पानी खन्याइनेछ,

يُصْهَرُ بِهِ مَا فِي بُطُونِهِمْ وَالْجُلُودُ ﴿٢١﴾

२१. त्यसबाट तिनीहरूका पेटमा रहेका वस्तुहरूका साथै (तिनीहरूको) छाला पनि पग्लिनेछ ।

وَلَهُم مَّقَامِعُ مِنْ حَدِيدٍ ﴿٢٢﴾

२२. तथा तिनीहरूलाई (दण्ड दिनका निम्ति) फलामका घनहरू तयार गरिनेछन् ।

كُلَّمَا أَرَادُوا أَن يَخْرُجُوا مِنْهَا مِنْ غَمٍّ أُعِيدُوا فِيهَا وَذُوقُوا عَذَابَ الْحَرِيقِ ﴿٢٣﴾

२३. ज्ब तिनीहरू पीडाका कारण त्यहाँबाट बाहिर निस्कन चाहनेछन्, तिनीहरूलाई त्यसैतर्फ फर्काइनेछ; तथा (तिनीहरूलाई भनिनेछ), "तिमीहरू ज्वलन्त दण्डको स्वाद चाख ।"

إِنَّ اللَّهَ يُدْخِلُ الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ جَنَّاتٍ تَجْرِي مِن تَحْتِهَا الْأَنْهَارُ يُحَلَّوْنَ فِيهَا مِنْ أَسَاوِرَ مِن ذَهَبٍ وَلُؤْلُؤًا ۖ وَلِبَاسُهُمْ فِيهَا حَرِيرٌ ﴿٢٤﴾

२४. परन्तु जसले विश्वास गर्छन् तथा पुण्यकार्य गर्छन् अल्लाहले तिमीहरूलाई यस्ता बगैंचाहरूमा दाखिल गर्नेछन् जसमनि नहरहरू बग्छन् । त्यहाँ तिनीहरूलाई सुनजडित कडाहरू र मोती पहिऱ्याइनेछ; तथा त्यहाँ तिनीहरूको रेशमको पहिरन हुनेछ ।

وَهُدُوا إِلَى الطَّيِّبِ مِنَ الْقَوْلِ وَهُدُوا إِلَىٰ صِرَاطِ الْحَمِيدِ ﴿٢٥﴾

२५. तथा तिनीहरूलाई पवित्र वचनतर्फ मार्ग प्रदर्शन गरिनेछ, तथा प्रशंसनीय - अल्लाहको मार्गतर्फ तिनीहरूलाई मार्ग प्रदर्शन गरिनेछ ।

إِنَّ الَّذِينَ كَفَرُوا وَيَصُدُّونَ عَن سَبِيلِ اللَّهِ وَالْمَسْجِدِ الْحَرَامِ الَّذِي جَعَلْنَاهُ لِلنَّاسِ سَوَاءً الْعَاكِفُ فِيهِ وَالْبَادِ ۚ وَمَن يُرِدْ فِيهِ بِإِلْحَادٍ بِظُلْمٍ نُّذِقْهُ مِنْ عَذَابٍ أَلِيمٍ ﴿٢٦﴾

२६. ती व्यक्तिहरू जसले अविश्वास गर्छन् तथा (मानिसहरूलाई) अल्लाहका मार्गबाट तथा हामीले सम्पूर्ण मानवजातिका निम्ति एकसमान बनाएको त्यस पवित्र मस्जिदतर्फ (जान)बाट रोक्दछन्, चाहे ती मानिसहरू त्यहाँका निवासी रहुन् अथवा मरुभूमि

(अरण्य) निवासी आगन्तुकहरू, तथा जसले अत्याचारपूर्वक त्यहाँ (सन्मार्ग) बाट हटाउन चाहन्छन्, तिनीहरूलाई हामी पीडादायक दण्डको स्वाद चखाउनेछौं ।

وَإِذْ بَوَّأْنَا لِإِبْرَاهِيمَ مَكَانَ الْبَيْتِ أَنْ لَا تُشْرِكْ بِي شَيْئًا وَطَهِّرْ بَيْتِيَ لِلطَّائِفِينَ وَالْقَائِمِينَ وَالرُّكَّعِ السُّجُودِ ﴿٢٧﴾

२७. तथा (त्यस समयको स्मरण गर) जब हामीले इब्राहिमलाई पवित्र घर (का'बा)का निम्ति जग्गा प्रदान गर्‍यौं तथा भन्यौं, "कुनै वस्तुलाई मेरो भागीदार नबनाउ, तथा मेरो घरलाई परिक्रमाकारीहरूका निम्ति तथा खडारहने र झुक्नेहरूका निम्ति तथा (प्रार्थना गर्दै) साष्टाङ्ग दण्डवत गर्ने व्यक्तिहरूका निम्ति पवित्र राख;

وَأَذِّنْ فِي النَّاسِ بِالْحَجِّ يَأْتُوكَ رِجَالًا وَعَلَىٰ كُلِّ ضَامِرٍ يَأْتِينَ مِنْ كُلِّ فَجٍّ عَمِيقٍ ﴿٢٨﴾

२८. "तथा मानवजातिमा हज्यात्राको घोषणा गर । तिनीहरू तिमीसमक्ष टाढा टाढाका मार्गहरूबाट पैदल र हरेक दुब्ला पत्ला सवारीमा (सवार भएर) आउनेछन्,

لِيَشْهَدُوا مَنَافِعَ لَهُمْ وَيَذْكُرُوا اسْمَ اللَّهِ فِي أَيَّامٍ مَعْلُومَاتٍ عَلَىٰ مَا رَزَقَهُمْ مِنْ بَهِيمَةِ الْأَنْعَامِ ۖ فَكُلُوا مِنْهَا وَأَطْعِمُوا الْبَائِسَ الْفَقِيرَ ﴿٢٩﴾

२९. "ताकि तिनीहरूले (त्यहाँ) तिनीहरूका निम्ति रहेको लाभलाई देखून तथा तिनीहरूलाई अल्लाहले प्रदान गरेका (घरपालुवा) पशुहरूमध्य चौपायाहरूमाथि निर्धारित दिनहरूमा अल्लाहको नाम उच्चारण गरून् । अतः ती (जनावर)हरूको मासु तिमीहरू पनि खाऊ र दरिद्र, अभावग्रस्त व्यक्तिहरूलाई खान देऊ ।

ثُمَّ لْيَقْضُوا تَفَثَهُمْ وَلْيُوفُوا نُذُورَهُمْ وَلْيَطَّوَّفُوا بِالْبَيْتِ الْعَتِيقِ ﴿٣٠﴾

३०. "त्यसपछि तिनीहरूले स्वयम्लाई पवित्र तुल्याउने कार्यहरू पूर्ण गरून् र आफ्ना भाकलहरू पूरा गर्न तथा प्राचीन घर (खाना-काबा) को परिकमा गर्न देउ ।

ذَٰلِكَ وَمَنْ يُعَظِّمْ حُرُمَاتِ اللَّهِ فَهُوَ خَيْرٌ لَهُ عِنْدَ رَبِّهِ ۗ وَأُحِلَّتْ لَكُمُ الْأَنْعَامُ إِلَّا مَا يُتْلَىٰ عَلَيْكُمْ ۖ فَاجْتَنِبُوا الرِّجْسَ مِنَ الْأَوْثَانِ وَاجْتَنِبُوا قَوْلَ الزُّورِ ﴿٣١﴾

३१. यो (अल्लाहको आदेश) हो । तथा जसले अल्लाहका पवित्र वस्तुहरूको सम्मान गर्छ, त्यो कार्य उसका निम्ति उसका प्रतिपालकका दृष्टिमा उत्तम ठहर्नेछ । तथा तिमीहरूप्रति जुन चौपायाहरू (अवैध) घोषित गरिएका छन् तिनीहरूबाहेक सबै चौपायाहरू तिमीहरूका निम्ति वैध गरिएका

छन्। त्यसकारण मूर्ति (पूजा)को घृणित कार्यबाट बच तथा सम्पूर्ण मिथ्या कुराहरूबाट बच ।

حُنَفَاءَ لِلَّهِ غَيْرَ مُشْرِكِينَ بِهِ ۚ وَمَن يُشْرِكْ بِاللَّهِ فَكَأَنَّمَا خَرَّ مِنَ السَّمَاءِ فَتَخْطَفُهُ الطَّيْرُ أَوْ تَهْوِي بِهِ الرِّيحُ فِي مَكَانٍ سَحِيقٍ ﴿٣١﴾

३२. कुनै वस्तुलाई उनको भागीदार नबनाइकन सदासर्वदा अल्लाको एकनिष्ठ भक्त बन । तथा जसले कुनै वस्तुलाई अल्लाहको भागीदार बनाउँछ, मानौं त्यो व्यक्ति उच्चस्थानबाट (तल) खस्न पुग्छ, तथा त्यसलाई पक्षीहरूले झम्टाहानि उडाउँछ, अथवा हावाले उडाएर उसलाई कुनै सुदूर स्थानमा (लगेर) फ्याँकिदिन्छ ।

ذَٰلِكَ وَمَن يُعَظِّمْ شَعَائِرَ اللَّهِ فَإِنَّهَا مِن تَقْوَى الْقُلُوبِ ﴿٣٢﴾

३३. त्यही (सत्य हो) । तथा जसले अल्लाहका पवित्र चिह्नहरूको सम्मान गर्छ त्यो कार्य निश्चयपूर्वक हृदयको धर्मनिष्ठताको (परिणामस्वरूप) रहेको छ ।

لَكُمْ فِيهَا مَنَافِعُ إِلَىٰ أَجَلٍ مُّسَمًّى ثُمَّ مَحِلُّهَا إِلَى الْبَيْتِ الْعَتِيقِ ﴿٣٣﴾

३४. तिनीहरू (बलिदानहरू)मा तिमीहरूका निम्ति एउटा निर्धारित समयसम्मका लागि लाभ रहने छ त्यसपछि तिनीहरूको बलिदान स्थल प्राचीन गृह (खाना-काबा) रहेको छ ।

وَلِكُلِّ أُمَّةٍ جَعَلْنَا مَنسَكًا لِّيَذْكُرُوا اسْمَ اللَّهِ عَلَىٰ مَا رَزَقَهُم مِّن بَهِيمَةِ الْأَنْعَامِ ۗ فَإِلَٰهُكُمْ إِلَٰهٌ وَاحِدٌ فَلَهُ أَسْلِمُوا ۗ وَبَشِّرِ الْمُخْبِتِينَ ﴿٣٤﴾

३५. तथा हामीले हरेक जातिका निम्ति एउटा बलिदानको प्रकिया निर्धारित गरेकाछौं, ताकि तिनीहरूले ती चौपाया - जातिका) जनावहरूमाथि अल्लाहको नाम उच्चारण गरून् जुन उनले तिनीहरूलाई प्रदान गरेका छन् । अतः तिमीहरूका उपास्य एकमात्र उपास्य हुन्; त्यसकारण तिमीहरू (सबै) उनैप्रति समर्पित होऊ । तथा विनयशील व्यक्तिहरूलाई तिमी शुभसन्देश देउ,

الَّذِينَ إِذَا ذُكِرَ اللَّهُ وَجِلَتْ قُلُوبُهُمْ وَالصَّابِرِينَ عَلَىٰ مَا أَصَابَهُمْ وَالْمُقِيمِي الصَّلَاةِ وَمِمَّا رَزَقْنَاهُمْ يُنفِقُونَ ﴿٣٥﴾

३६. ती व्यक्तिहरू जसको हृदय अल्लाहको चर्चा सुन्नासाथ भयले परिपूर्ण हुन्छ तथा जसले जस्तै (सङ्कट) आइलाग्दा पनि धैर्यतापूर्वक त्यसलाई सहन गर्छन् तथा जसले नमाज अनुष्ठान गर्छन् र हामीले तिनीहरूलाई प्रदान गरेका वस्तुहरूबाट

अल्लाहका मार्गमा खर्च गर्छन् ।

وَالْبُدْنَ جَعَلْنٰهَا لَكُمْ مِّنْ شَعَآئِرِ اللّٰهِ لَكُمْ فِيْهَا خَيْرٌ ۖ فَاذْكُرُوا اسْمَ اللّٰهِ عَلَيْهَا صَوَآفَّ ۚ فَاِذَا وَجَبَتْ جُنُوْبُهَا فَكُلُوْا مِنْهَا وَ اَطْعِمُوا الْقَانِعَ وَالْمُعْتَرَّ ۚ كَذٰلِكَ سَخَّرْنٰهَا لَكُمْ لَعَلَّكُمْ تَشْكُرُوْنَ ﴿٣٦﴾

३७. तथा बलिदानका उँटहरूलाई (पनि) हामीले तिमीहरूका निम्ति हाम्रा पवित्र चिह्नहरूमध्ये ठहऱ्याएका छौं । तिनीहरूमा तिमीहरूका निम्ति (धेरैप्रकारका) लाभहरू रहेका छन् । अत: तिनीहरूलाई बाँधेर पङ्‌तिमा खडा गरिएको समयमा तिनीहरूमाथि अल्लाहको नाम उच्चारण गर । तथा जब (बलिदान पछि) तिनीहरू (मरेर) एकतर्फ ढल्छन् तब तिनीहरूको मासु तिमीहरू (आफूपनि) खाऊ र ती (अभावग्रस्त) व्यक्तिहरूलाई (पनि) ख्वाऊ जो (त्यसप्रति) सन्तुष्ट छन् तथा ती व्यक्तिहरूलाई (पनि ख्वाऊ) जो आफ्नो गरिबीका कारण पीडित छन् । यसप्रकार ती जनावरहरूलाई हामीले तिमीहरूका अधीनस्थ गरेका छौं, ताकि तिमीहरू कृतज्ञ बन ।

لَنْ يَّنَالَ اللّٰهَ لُحُوْمُهَا وَ لَا دِمَآؤُهَا وَ لٰكِنْ يَّنَالُهُ التَّقْوٰى مِنْكُمْ ۚ كَذٰلِكَ سَخَّرَهَا لَكُمْ لِتُكَبِّرُوا اللّٰهَ عَلٰى مَا هَدٰىكُمْ ۚ وَبَشِّرِ الْمُحْسِنِيْنَ ﴿٣٧﴾

३८. न तिनीहरूको मासु अल्लाहसम्म पुग्छ न त तिनीहरूको रक्त नै, अपितु तिमीहरूको धर्मनिष्ठता (मात्र) उनीसम्म पुग्छ । यसप्रकार उनले तिनीहरूलाई तिमीहरूका अधिनस्थ गरेका छन्, ताकि तिमीहरूलाई मार्ग देखाएबापत तिमीहरू अल्लाहको गुणगान गर । तथा जसले उपकार गर्छन् तिनीहरूलाई शुभसन्देश देऊ

اِنَّ اللّٰهَ يُدٰفِعُ عَنِ الَّذِيْنَ اٰمَنُوْا ۚ اِنَّ اللّٰهَ لَا يُحِبُّ كُلَّ خَوَّانٍ كَفُوْرٍ ﴿٣٨﴾

३९. अल्लाहले निश्चय नै विश्वासीजनहरूको प्रतिरक्षा गर्ने गर्छन् । अल्लाहले हरेक बेइमान अथवा अकृतज्ञ व्यक्तिलाई निश्चय नै मन पराउँदैनन् ।

اُذِنَ لِلَّذِيْنَ يُقٰتَلُوْنَ بِاَنَّهُمْ ظُلِمُوْا ۚ وَاِنَّ اللّٰهَ عَلٰى نَصْرِهِمْ لَقَدِيْرُ ﴿٣٩﴾

४०. जुन व्यक्तिहरूविरुद्ध युद्ध सञ्चालन गरिएको छ ती व्यक्तिहरूलाई (युद्ध गर्ने) अनुमति प्रदान गरिएको छ, किनभने तिनीहरूमाथि अत्याचार गरिएकोछ तथा तिनीहरूको सहयोग गर्न अल्लाह

सामर्थ्यवान रहेका छन् ।

४१. ती व्यक्तिहरू नै हुन् जसलाई केवल "अल्लाह नै हाम्रा प्रतिपालक हुन्" भनी तिनीहरूले भनेका कारण अत्याचारपूर्वक तिनीहरूका घरबाट निस्कासित गरियो, तथा यदि अल्लाहले केही व्यक्तिहरूद्वारा अत्य केही व्यक्तिहरूलाई नहटाएका भए मठहरू र गिर्जाघरहरू तथा यहुदीहरूका उपासनागृहहरू तथा मस्जिदहरू जहाँ बारम्बार अल्लाहको नामको संस्मरण गरिन्छ, यो सबैलाई निश्चयपूर्वक पूर्णरूपले भत्काइने थियो । तथा अल्लाहले अवश्य त्यसलाई सहयोग गर्नेछन् जसले उनको (धर्मको) सहयोग गर्छ । अल्लाह वस्तुतः परम सामर्थ्यवान, परम पराकमी छन्–

الَّذِينَ أُخْرِجُوا مِن دِيَارِهِم بِغَيْرِ حَقٍّ إِلَّا أَن يَقُولُوا رَبُّنَا اللَّهُ ۗ وَلَوْلَا دَفْعُ اللَّهِ النَّاسَ بَعْضَهُم بِبَعْضٍ لَّهُدِّمَتْ صَوَامِعُ وَبِيَعٌ وَصَلَوَاتٌ وَمَسَاجِدُ يُذْكَرُ فِيهَا اسْمُ اللَّهِ كَثِيرًا ۗ وَلَيَنصُرَنَّ اللَّهُ مَن يَنصُرُهُ ۗ إِنَّ اللَّهَ لَقَوِيٌّ عَزِيزٌ

४२. ती व्यक्तिहरू नै हुन्, जसलाई हामीले पृथ्वमिा दृढ तुल्याएमा तिनीहरूले नमाज अनुष्ठान गर्नेछन् र जगात तिर्नेछन् तथा पुण्य(कार्य) गर्ने परामर्श दिनेछन् र अपकर्मबाट रोक्नेछन् । तथा सम्पूर्ण मामिलाहरूको परिणाम अल्लाहकै -हातमा) रहेकोछ ।

الَّذِينَ إِن مَّكَّنَّاهُمْ فِي الْأَرْضِ أَقَامُوا الصَّلَاةَ وَآتَوُا الزَّكَاةَ وَأَمَرُوا بِالْمَعْرُوفِ وَنَهَوْا عَنِ الْمُنكَرِ ۗ وَلِلَّهِ عَاقِبَةُ الْأُمُورِ

४३. तथा यदि तिनीहरूले तिमीलाई मिथ्यावादीताको आरोप लगाउँछन् भने, ठीक त्यसै प्रकार, तिनीहरूभन्दा पहिला नूहका मानिसहरूले र आद -जातिले) र समूद (जाति)ले (पनि आफ्ना नबीहरूप्रति) मिथ्यावादिताको आरोप लगाएका थिए ।

وَإِن يُكَذِّبُوكَ فَقَدْ كَذَّبَتْ قَبْلَهُمْ قَوْمُ نُوحٍ وَعَادٌ وَثَمُودُ

४४. इब्राहिमका मानिसहरूले र लूतका मानिसहरूले पनि (त्यही गरेका थिए),

وَقَوْمُ إِبْرَاهِيمَ وَقَوْمُ لُوطٍ

४५. तथा मेदियन्का निवासीहरूले तथा मूसालाई (पनि) मिथ्यावादी ठहऱ्याइएको थियो । परन्तु मैले अविश्वासीहरूलाई अवसर प्रदान गरें, त्यसपछि पुनः तिनीहरूलाई समातें, तथा मेरो दण्ड कस्तो

وَأَصْحَابُ مَدْيَنَ ۖ وَكُذِّبَ مُوسَىٰ ۖ فَأَمْلَيْتُ لِلْكَافِرِينَ ثُمَّ أَخَذْتُهُمْ ۖ فَكَيْفَ كَانَ نَكِيرِ

-भयानक) थियो त !

४६. तथा कति यस्ता नगरहरूलाई हामीले तिनीहरू अपकर्ममा प्रवृत्त रहेकै अवस्थामा ध्वस्त गऱ्यौं, अतः ती नगरहरू आफ्नो छाना उल्टो पारी निमिट्यान्न हुन पुगेका देखिन्छन्; तथा (कति नै) इनारहरू र दृढ महलहरू पनि परित्यक्त रहेका छन् ।

فَكَاَيِّنْ مِّنْ قَرْيَةٍ اَهْلَكْنٰهَا وَ هِيَ ظَالِمَةٌ فَهِيَ خَاوِيَةٌ عَلٰى عُرُوْشِهَا وَ بِئْرٍ مُّعَطَّلَةٍ وَّقَصْرٍ مَّشِيْدٍ ﴿٤٦﴾

४७. के तिनीहरूले धर्तीमा भ्रमण गरेर हेरेका छैनन्, ताकि तिनीहरूलाई यस्तो हृदय प्राप्त होस् जसले बुझ्न सकोस् अथवा यस्ता कान प्राप्त होउन् जसले सुन्न सकून्? परन्तु (वास्तविकता के हो भने) नेत्रहरू अन्धा रहेका छैनन्, अपितु छातीभित्र रहेको हृदय नै अन्धो रहेको छ ।

اَفَلَمْ يَسِيْرُوْا فِي الْاَرْضِ فَتَكُوْنَ لَهُمْ قُلُوْبٌ يَّعْقِلُوْنَ بِهَآ اَوْ اٰذَانٌ يَّسْمَعُوْنَ بِهَا ۚ فَاِنَّهَا لَا تَعْمَى الْاَبْصَارُ وَلٰكِنْ تَعْمَى الْقُلُوْبُ الَّتِيْ فِي الصُّدُوْرِ ﴿٤٧﴾

४८. तथा तिनीहरू तिमीलाई शीघ्र दण्ड (ल्याउन) अनुरोध गर्छन्, परन्तु अल्लाहले आफ्नो वचनलाई कदापि तोड्ने छैनन् । तथा वास्तवमा तिम्रा प्रतिपालकसमक्ष एक दिन तिमीहरूका गणनाको एक हजार वर्ष बराबर हुने गर्छ ।

وَ يَسْتَعْجِلُوْنَكَ بِالْعَذَابِ وَ لَنْ يُّخْلِفَ اللّٰهُ وَعْدَهٗ ؕ وَاِنَّ يَوْمًا عِنْدَ رَبِّكَ كَاَلْفِ سَنَةٍ مِّمَّا تَعُدُّوْنَ ﴿٤٨﴾

४९. तथा कतिपय अत्याचारमा व्यस्त रहेका नगर (वासी)हरूलाई मैले अवसर प्रदान गरें । त्यसपछि तिनीहरूलाई मैले समातें, तथा मतर्फै प्रत्यावर्तन हुनेछ ।

وَكَاَيِّنْ مِّنْ قَرْيَةٍ اَمْلَيْتُ لَهَا وَ هِيَ ظَالِمَةٌ ثُمَّ اَخَذْتُهَا ۚ وَ اِلَيَّ الْمَصِيْرُ ﴿٤٩﴾

५०. तिमी भन, "ए मानवजाति, म ता तिमीहरूका निम्ति केवल एउटा खुल्ला सचेतक(स्वरूप) हुँ ।"

قُلْ يٰۤاَيُّهَا النَّاسُ اِنَّمَآ اَنَا لَكُمْ نَذِيْرٌ مُّبِيْنٌ ﴿٥٠﴾

५१. ती व्यक्तिहरू जसले विश्वास गर्छन् तथा पुण्यकार्य गर्छन्, तिनीहरूलाई क्षमा तथा सम्मानित जीविका प्राप्त हुनेछ ।

فَالَّذِيْنَ اٰمَنُوْا وَ عَمِلُوا الصّٰلِحٰتِ لَهُمْ مَّغْفِرَةٌ وَّ رِزْقٌ كَرِيْمٌ ﴿٥١﴾

५२. परन्तु जुन व्यक्तिहरू (हाम्रो उद्देश्यलाई) विफल तुल्याउने चाहनाले हाम्रा चिह्नहरू विरुद्ध प्रचेष्टा गर्छन्- तिनीहरू

وَالَّذِيْنَ سَعَوْا فِيْۤ اٰيٰتِنَا مُعٰجِزِيْنَ اُولٰٓئِكَ اَصْحٰبُ الْجَحِيْمِ ﴿٥٢﴾

अग्निका निवासी बन्नेछन् ।

५३. तिमीभन्दा पहिला हामीले कदापि कुनै यस्ता सन्देशवाहक अथवा नबी पठाएनौं परन्तु जब उनले (आफ्नो कुनै लक्षयलाई कार्यान्वयन गर्न) चाहे, सैतानले उनको चाहनाको (मार्गमा रोकावट) सिर्जना गऱ्यो । परन्तु अल्लाहले सैतानद्वारा सिर्जना गरिएका (रोकावटहरू)लाई हटाइदिन्छन् । त्यसपछि अल्लाहले आफ्ना चिह्नहरूलाई दृढतापूर्वक स्थापना गर्छन्। तथा अल्लाह सर्वज्ञ, तत्त्वज्ञ छन् ।

وَمَآ أَرْسَلْنَا مِن قَبْلِكَ مِن رَّسُولٍ وَلَا نَبِيٍّ إِلَّآ إِذَا تَمَنَّىٰٓ أَلْقَى ٱلشَّيْطَٰنُ فِىٓ أُمْنِيَّتِهِۦ فَيَنسَخُ ٱللَّهُ مَا يُلْقِى ٱلشَّيْطَٰنُ ثُمَّ يُحْكِمُ ٱللَّهُ ءَايَٰتِهِۦ ۗ وَٱللَّهُ عَلِيمٌ حَكِيمٌ ﴿٥٣﴾

५४. (उनले नै यसको अनुमति दिन्छन्) ताकि (नबीहरूका मार्गमा) सैतानले सिर्जना गरेका (ती रोकावटहरू)लाई उनले ती हृदयमा रोग रहेका र कठोर हृदय रहेका व्यक्तिहरूका निम्ति एउटा परीषास्वरूप बनाउन्- तथा अत्याचारीहरू निश्चय नै घोर विरोधाचरण गर्न पुगेका छन् ।

لِّيَجْعَلَ مَا يُلْقِى ٱلشَّيْطَٰنُ فِتْنَةً لِّلَّذِينَ فِى قُلُوبِهِم مَّرَضٌ وَٱلْقَاسِيَةِ قُلُوبُهُمْ ۗ وَإِنَّ ٱلظَّٰلِمِينَ لَفِى شِقَاقٍۭ بَعِيدٍ ﴿٥٤﴾

५५. तथा जसलाई ज्ञान प्रदान गरिएको छ तिनीहरूले त्यो (कुरान) तिम्रा प्रतिपालकका तर्फबाट रहेको सत्य हो भनी जानून्, अतः त्यसप्रति विश्वास स्थापना गरून् फलस्वरूप तिनीहरूको हृदय उनीसमक्ष झुकोस् । तथा जसले विश्वास गर्छन् तिनीहरूलाई अल्लाहले निश्चयपूर्वक सन्मार्ग देखाउँछन् ।

وَلِيَعْلَمَ ٱلَّذِينَ أُوتُوا۟ ٱلْعِلْمَ أَنَّهُ ٱلْحَقُّ مِن رَّبِّكَ فَيُؤْمِنُوا۟ بِهِۦ فَتُخْبِتَ لَهُۥ قُلُوبُهُمْ ۗ وَإِنَّ ٱللَّهَ لَهَادِ ٱلَّذِينَ ءَامَنُوٓا۟ إِلَىٰ صِرَٰطٍ مُّسْتَقِيمٍ ﴿٥٥﴾

५६. तथा अविश्वासी व्यक्तिहरूले त्यसप्रति सन्देह गर्न तबसम्म छाड्ने छैनन् जबसम्म तिनीहरूमाथि त्यो निर्धारित घडी अकस्मात आउने छैन अथवा जबसम्म एउटा विध्वंसक दिनको दण्ड तिनीहरूसमक्ष आउने छैन ।

وَلَا يَزَالُ ٱلَّذِينَ كَفَرُوا۟ فِى مِرْيَةٍ مِّنْهُ حَتَّىٰ تَأْتِيَهُمُ ٱلسَّاعَةُ بَغْتَةً أَوْ يَأْتِيَهُمْ عَذَابُ يَوْمٍ عَقِيمٍ ﴿٥٦﴾

५७. त्यसदिन राजपाट अल्लाहकै -हातमा) हुनेछ । उनले तिनीहरूका बीच इन्साफ गर्नेछन् । अतः जसले विश्वास गर्छन् र पुण्यकार्य गर्छन् तिनीहरू वैभवपूर्ण

ٱلْمُلْكُ يَوْمَئِذٍ لِّلَّهِ يَحْكُمُ بَيْنَهُمْ ۚ فَٱلَّذِينَ ءَامَنُوا۟ وَعَمِلُوا۟ ٱلصَّٰلِحَٰتِ فِى جَنَّٰتِ ٱلنَّعِيمِ ﴿٥٧﴾

बगैंचाहरूमा रहने छन् ।

५८. परन्तु जसले अविश्वास गर्छन् तथा हाम्रा चिह्नहरूलाई अस्वीकार गर्छन् तिनीहरूलाई भने अपमानजनक दण्ड मिल्नेछ ।

وَالَّذِيْنَ كَفَرُوْا وَكَذَّبُوْا بِاٰيٰتِنَا فَاُولٰٓئِكَ لَهُمْ عَذَابٌ مُّهِيْنٌ ﴿٥٨﴾

५९. तथा जसले अल्लाहका मार्गमा आफ्ना घरहरू परित्याग गर्छन् तथा त्यसपछि तिनीहरू या त मारिन्छन् अथवा (कालगतिले) मर्छन्, तिनीहरूलाई अल्लाहले अवश्य उत्तम जीवनवृत्ति प्रदान गर्नेछन् । तथा अल्लाह निश्चय नै सार्वोत्तम बृत्तिदाता रहेका छन् ।

وَالَّذِيْنَ هَاجَرُوْا فِيْ سَبِيْلِ اللّٰهِ ثُمَّ قُتِلُوْٓا اَوْ مَاتُوْا لَيَرْزُقَنَّهُمُ اللّٰهُ رِزْقًا حَسَنًا ؕ وَاِنَّ اللّٰهَ لَهُوَ خَيْرُ الرّٰزِقِيْنَ ﴿٥٩﴾

६०. उनले तिनीहरूलाई अवश्य एउटा यस्तो स्थानमा दाखिल गर्नेछन् जसलाई तिनीहरूले अत्यन्त मन पराउनेछन् । तथा अल्लाह सर्वज्ञ, परम सहिष्णु रहेका छन् ।

لَيُدْخِلَنَّهُمْ مُّدْخَلًا يَّرْضَوْنَهٗ ؕ وَاِنَّ اللّٰهَ لَعَلِيْمٌ حَلِيْمٌ ﴿٦٠﴾

६१. त्यो (त्यसै हुनेछ) । तथा जसले आफूलाई सताएअनुसार त्यही मात्रामा प्रतिशोध लिन्छ र त्यसपछि (पुनः शत्रुले) अत्याचार गर्छ भने, अल्लाहले अवश्य उसलाई सहयोग गर्नेछन् । अल्लाह वस्तुतः पापमोचनकारी (तथा) परम क्षमाशील छन् ।

ذٰلِكَ ۚ وَمَنْ عَاقَبَ بِمِثْلِ مَا عُوْقِبَ بِهٖ ثُمَّ بُغِيَ عَلَيْهِ لَيَنْصُرَنَّهُ اللّٰهُ ؕ اِنَّ اللّٰهَ لَعَفُوٌّ غَفُوْرٌ ﴿٦١﴾

६२. यसको कारण के हो भने, अल्लाहले रात्रिलाई दिनमा प्रवेश गराउँछन् तथा दिनलाई रात्रिमा प्रवेश गराउँछन्, किनभने अल्लाह सर्वश्रोता, सर्वद्रष्टा रहेका छन् ।

ذٰلِكَ بِاَنَّ اللّٰهَ يُوْلِجُ الَّيْلَ فِي النَّهَارِ وَيُوْلِجُ النَّهَارَ فِي الَّيْلِ وَاَنَّ اللّٰهَ سَمِيْعٌ بَصِيْرٌ ﴿٦٢﴾

६३. यो किन हो भने अल्लाह नै परम सत्य हुन्, तथा उनलाई छाडी तिनीहरू जुन वस्तुलाई पुकार्छन् त्यो वस्तु मिथ्या रहेको छ, तथा किनभने अल्लाह नै सर्वोच्च, सर्वश्रेष्ठ रहेका छन् ।

ذٰلِكَ بِاَنَّ اللّٰهَ هُوَ الْحَقُّ وَاَنَّ مَا يَدْعُوْنَ مِنْ دُوْنِهٖ هُوَ الْبَاطِلُ وَاَنَّ اللّٰهَ هُوَ الْعَلِيُّ الْكَبِيْرُ ﴿٦٣﴾

६४. अल्लाहले नै आकाशबाट पानी बर्साउँछन् जसबाट पृथ्वीमा हरियाली उत्पन्न हुन्छ भन्ने कुरा तिमीले देखेका छैनौ

اَلَمْ تَرَ اَنَّ اللّٰهَ اَنْزَلَ مِنَ السَّمَآءِ مَآءً ؗ فَتُصْبِحُ الْاَرْضُ مُخْضَرَّةً ؕ اِنَّ اللّٰهَ لَطِيْفٌ خَبِيْرٌ ﴿٦٤﴾

र? वस्तुतः अल्लाह सूक्ष्मदर्शी, परिज्ञाता छन्

६५. आकाशमण्डल र पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरू उनकै हुन् । तथा अल्लाह निश्चय नै पूर्ण आत्मनिर्भर र परम प्रशंसनीय छन् ।

لَهٗ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْاَرْضِ ؕ وَاِنَّ اللّٰهَ لَهُوَ الْغَنِيُّ الْحَمِيْدُ ﴿٦٥﴾

६६. अल्लाहले पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरू तिमीहरूका अधीनस्थ गरेका छन् तथा जहाजहरू पनि उनकै आदेश अन्तर्गत समुद्रमा चल्ने गर्छन् भनी तिमीले देखेका छैनौ र? तथा उनी नै आकाशमण्डललाई आफ्नो आदेशबिना* पृथ्वमिा खस्नबाट रोक्छन् । निश्चय नै अल्लाह मानवजातिप्रति अति स्नेहशील, तथा परम करुणाशील छन्

اَلَمْ تَرَ اَنَّ اللّٰهَ سَخَّرَ لَكُمْ مَّا فِي الْاَرْضِ وَالْفُلْكَ تَجْرِيْ فِي الْبَحْرِ بِاَمْرِهٖ ؕ وَيُمْسِكُ السَّمَآءَ اَنْ تَقَعَ عَلَى الْاَرْضِ اِلَّا بِاِذْنِهٖ ؕ اِنَّ اللّٰهَ بِالنَّاسِ لَرَءُوْفٌ رَّحِيْمٌ ﴿٦٦﴾

६७. तथा उनी नै हुन् जसले तिमीहरूलाई जीवन प्रदान गरे, त्यसपछि उनले तिमीहरूलाई मृत्यु प्रदान गर्नेछन्, त्यसपछि (पुनः) उनले तिमीहरूलाई जीवन दान दिनेछन् । मानिसको जात निश्चय नै अत्यन्त अकृतज्ञ रहेको छ ।

وَهُوَ الَّذِيْٓ اَحْيَاكُمْ ؗ ثُمَّ يُمِيْتُكُمْ ثُمَّ يُحْيِيْكُمْ ؕ اِنَّ الْاِنْسَانَ لَكَفُوْرٌ ﴿٦٧﴾

६८. हरेक जातिका निम्ति हामीले कुर्बानी (बलि)को तरिका निर्धारित गरेका छौं जसलाई उसले पालना गर्छ; अतः तिनीहरूले यस मामिलामा तिमीसित विवाद नगरून्; तथा तिमी आफ्ना प्रतिपालकतर्फ आह्वान गर, किनभने तिमी निश्चयपूर्वक सन्मार्गगामी रहेका छौ ।

لِكُلِّ اُمَّةٍ جَعَلْنَا مَنْسَكًا هُمْ نَاسِكُوْهُ فَلَا يُنَازِعُنَّكَ فِي الْاَمْرِ وَادْعُ اِلٰى رَبِّكَ ؕ اِنَّكَ لَعَلٰى هُدًى مُّسْتَقِيْمٍ ﴿٦٨﴾

६९. तथा यदि तिनीहरूले तिमीसित विवाद गरेमा, तिमी के भन भने, "तिमीहरूका कियाकलापलाई अल्लाह नै सर्वाधिक जान्दछन् ।

وَاِنْ جٰدَلُوْكَ فَقُلِ اللّٰهُ اَعْلَمُ بِمَا تَعْمَلُوْنَ ﴿٦٩﴾

---

* सम्भवत 'अनुमति' शब्द उल्का खस्ने घटनासित मेल खान सक्छ, तथा त्यसैगरी अन्य आकाशीय वस्तुहरूसित जसले बारम्बार पृथ्वीमाथि ध्वनियुक्त आक्रमण गर्ने गर्छन् ।

ٱللَّهُ يَحْكُمُ بَيْنَكُمْ يَوْمَ ٱلْقِيَٰمَةِ
فِيمَا كُنتُمْ فِيهِ تَخْتَلِفُونَ ٦٩

७०. "जुन कुरामा तिमीहरू मतभेद राख्ने गर्छौ त्यसबारे पुनरुत्थानका दिन तिमीहरूका माझमा अल्लाहले निर्णय गर्नेछन् ।

أَلَمْ تَعْلَمْ أَنَّ ٱللَّهَ يَعْلَمُ مَا فِى ٱلسَّمَآءِ
وَٱلْأَرْضِ ۗ إِنَّ ذَٰلِكَ فِى كِتَٰبٍ ۚ إِنَّ
ذَٰلِكَ عَلَى ٱللَّهِ يَسِيرٌ ٧٠

७१. आकाशमण्डल तथा पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरूलाई अल्लाहले जान्दछन् भनी तिमीलाई थाहा छैन र? निश्चय नै, यी (सबै) कुरा एउटा पुस्तकमा लिपिवद्ध (सुरक्षित) रहेका छन्, (तथा) यो कार्य अल्लाहका निम्ति अति सहज रहेको छ ।

وَيَعْبُدُونَ مِن دُونِ ٱللَّهِ مَا لَمْ يُنَزِّلْ
بِهِۦ سُلْطَٰنًا وَمَا لَيْسَ لَهُم بِهِۦ عِلْمٌ ۗ
وَمَا لِلظَّٰلِمِينَ مِن نَّصِيرٍ ٧١

७२. तथा तिनीहरू अल्लाहलाई छाडी त्यस्ताको उपासना गर्छन् जसबारे उनले कुनै प्रमाण अवतीर्ण गरेका छैनन्, तथा त्यसबारे तिनीहरूलाई कुनै ज्ञान पनि प्राप्त छैन । तथा अत्याचारीहरूको कोही सहयोगी हुनेछैन ।

وَإِذَا تُتْلَىٰ عَلَيْهِمْ ءَايَٰتُنَا بَيِّنَٰتٍ
تَعْرِفُ فِى وُجُوهِ ٱلَّذِينَ كَفَرُوا۟
ٱلْمُنكَرَ ۖ يَكَادُونَ يَسْطُونَ بِٱلَّذِينَ
يَتْلُونَ عَلَيْهِمْ ءَايَٰتِنَا ۗ قُلْ أَفَأُنَبِّئُكُم
بِشَرٍّ مِّن ذَٰلِكُمُ ۗ ٱلنَّارُ وَعَدَهَا
ٱللَّهُ ٱلَّذِينَ كَفَرُوا۟ ۖ وَبِئْسَ ٱلْمَصِيرُ ٧٢

७३. तथा जब तिनीहरूसमक्ष हाम्रा स्पष्ट निर्देशनहरूको पाठ गरिन्छ -तब) अविश्वासीहरूका मुहारमा तिमी अरूचिको चिह्न देख्न सक्छौ । सम्भवत: तिनीहरूसमक्ष हाम्रा निर्देशनहरूको पाठ गर्ने व्यक्तिहरूलाई तिनीहरूले आक्रमण गरिहाल्न सक्छन् । तिमी भन, "के म तिमीहरूलाई त्यो भन्दा निकृष्ट कुराको खबर दिऊँ ? त्यो अग्नि (नै) हो ! अल्लाहले अविश्वासीहरूलाई त्यसको प्रतिश्रुति दिएका छन् । तथा त्यो अति निकृष्ट गन्तव्यस्थान रहेको छ !"

يَٰٓأَيُّهَا ٱلنَّاسُ ضُرِبَ مَثَلٌ فَٱسْتَمِعُوا۟
لَهُۥٓ ۚ إِنَّ ٱلَّذِينَ تَدْعُونَ مِن دُونِ ٱللَّهِ
لَن يَخْلُقُوا۟ ذُبَابًا وَلَوِ ٱجْتَمَعُوا۟ لَهُۥ ۖ
وَإِن يَسْلُبْهُمُ ٱلذُّبَابُ شَيْـًٔا
لَّا يَسْتَنقِذُوهُ مِنْهُ ۚ ضَعُفَ
ٱلطَّالِبُ وَٱلْمَطْلُوبُ ٧٣

७४. हे मानिसहरूहो ! एउटा उपमा बयान गरिन्छ, अत: त्यसलाई ध्यानपूर्वक सुन । निश्चय नै, अल्लाहलाई छाडी तिमीहरू जसलाई पुकार्छौ तिनीहरूले एउटा झिँगो (समेत) सृष्टि गर्न सक्दैनन्, चाहे त्यस उद्देश्य(प्राप्ति)का निम्ति तिनीहरू सबै एकजुट नै किन नहुन् । तथा यदि झिङ्गाले तिनीहरूको कुनै वस्तु खोसेर लग्यो भने, तिनीहरूले त्यसबाट त्यो वस्तु छुटाउन

सक्नेछैनन् । वस्तुतः प्रार्थी र प्रार्थनाग्राही (दुबै) अति दुर्बल रहेका छन् ।

مَا قَدَرُوا اللّٰهَ حَقَّ قَدْرِهٖ ؕ اِنَّ اللّٰهَ لَقَوِیٌّ عَزِیْزٌ ۝٧٤

७५. तिनीहरू अल्लाहको यथायोग्य मूल्याङ्कन गर्दैनन् । निश्चय नै, अल्लाह सर्वशक्तिमान, सर्वविजयी छन् ।

اَللّٰهُ یَصْطَفِیْ مِنَ الْمَلٰٓئِكَةِ رُسُلًا وَّمِنَ النَّاسِ ؕ اِنَّ اللّٰهَ سَمِیْعٌۢ بَصِیْرٌ ۝٧٥

७६. अल्लाहले देवदूतहरूबाट र मनिसहरूबाट सन्देशवाहक छान्ने गर्छन् । निश्चय नै, अल्लाह सर्वस्रोता, सर्वद्रष्टा छन्

یَعْلَمُ مَا بَیْنَ اَیْدِیْهِمْ وَمَا خَلْفَهُمْ ؕ وَاِلَى اللّٰهِ تُرْجَعُ الْاُمُوْرُ ۝٧٦

७७. उनीहरूका अगाडि र पछाडि के छ भन्ने कुरा उनलाई थाहा छ । तथा (सबै) मामिलाहरू अल्लाहतर्फै फर्काइनेछन् ।

یٰٓاَیُّهَا الَّذِیْنَ اٰمَنُوا ارْكَعُوْا وَاسْجُدُوْا وَاعْبُدُوْا رَبَّكُمْ وَافْعَلُوا الْخَیْرَ لَعَلَّكُمْ تُفْلِحُوْنَ ۝٧٧

७८. ए विश्वासीजन हो ! तिमीहरू प्रार्थनामा झुक्ने र साष्टाङ्ग दण्डवत गर्ने गर, तथा आफ्ना प्रतिपालकको उपासना गर, तथा पुण्यकार्यहरू गर ताकि तिमीहरू कृतार्थ हुन सक ।

وَجَاهِدُوْا فِی اللّٰهِ حَقَّ جِهَادِهٖ ؕ هُوَ اجْتَبٰىكُمْ وَمَا جَعَلَ عَلَیْكُمْ فِی الدِّیْنِ مِنْ حَرَجٍ ؕ مِلَّةَ اَبِیْكُمْ اِبْرٰهِیْمَ ؕ هُوَ سَمّٰىكُمُ الْمُسْلِمِیْنَ ۙ۬ مِنْ قَبْلُ وَفِیْ هٰذَا لِیَكُوْنَ الرَّسُوْلُ شَهِیْدًا عَلَیْكُمْ وَتَكُوْنُوْا شُهَدَآءَ عَلَى النَّاسِ ۖۚ فَاَقِیْمُوا الصَّلٰوةَ وَاٰتُوا الزَّكٰوةَ وَاعْتَصِمُوْا بِاللّٰهِ ؕ هُوَ مَوْلٰىكُمْ ۚ فَنِعْمَ الْمَوْلٰى وَنِعْمَ النَّصِیْرُ ۝٧٨

७९. तथा अल्लाहको मार्गमा त्यसरी संघर्ष गर जसरी तिमीहरूले त्यसमा संघर्ष गर्नु आवश्यक छ । उनले तिमीहरूलाई चुनेका छन्, तथा धर्मका मामिलामा उनले तिमीहरूमाथि कुनै प्रकारको कठिनाइ लादेका छैनन्; (अतः) आफ्ना पितृ इब्राहिमको आस्थाको (अनुसरण गर), उनले पहिलेका (पुस्तकहरू) तथा यस (पुस्तक दुबैमा) तिमीहरूको नाम मुसलमान राखेका छन्, ताकि यी सन्देशवाहक तिमीहरूका साक्षी रहुन् तथा तिमीहरू मानव जातिका साक्षी बन । अतः नमाज अनुष्ठान गर र जगात बुझाऊ तथा अल्लाहलाई दृढतापूर्वक अँगाल । उनी नै तिमीहरूका स्वामी हुन् । कति नै उत्तम स्वामी र कति नै उत्तम सहयोगी रहेका छन् !

سُوْرَةُ الْمُؤْمِنُوْنَ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ مِائَةٌ وَّتِسْعَ عَشَرَةَ اٰيَةً وَّسِتَّةُ رُكُوْعَاتٍ

## अल्-मोमिनून
(हिजरतअघि अवतरित)

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

२. निश्चय नै, ती विश्वासीजनलाई सफलता प्राप्त हुन्छ,

قَدْ اَفْلَحَ الْمُؤْمِنُوْنَ ② الجزء

३. जसले आफ्ना नमाजमा नम्रता अवलम्बन गर्छन्,

الَّذِيْنَ هُمْ فِيْ صَلَاتِهِمْ خٰشِعُوْنَ ③

४. तथा जसले सबै प्रकारका अनर्थ कुराहरूलाई परित्याग गर्छन्,

وَالَّذِيْنَ هُمْ عَنِ اللَّغْوِ مُعْرِضُوْنَ ④

५. तथा जसले सक्रियताका साथ जगात बुझाउने गर्छन्,

وَالَّذِيْنَ هُمْ لِلزَّكٰوةِ فٰعِلُوْنَ ⑤

६. तथा जसले आफ्ना (गुप्ताङ्गहरूको) पवित्रताको संरक्षण गर्छन्-

وَالَّذِيْنَ هُمْ لِفُرُوْجِهِمْ حٰفِظُوْنَ ⑥

७. सिवाय आफ्ना पत्नीहरू अथवा ती (महिलाहरू) जुन तिनीहरूका दायाँ हातअन्तर्गत रहेका छन्, तिनीहरूका सम्बन्धमा भने उनीहरूलाई कुनै आरोप लाग्ने छैन;

اِلَّا عَلٰۤى اَزْوَاجِهِمْ اَوْ مَا مَلَكَتْ اَيْمَانُهُمْ فَاِنَّهُمْ غَيْرُ مَلُوْمِيْنَ ⑦

८. परन्तु जुन व्यक्तिहरू त्यसबाहेक कुनै अन्य कुराका अभिलाषी हुन्छन् तिनीहरू भने सीमोल्लङ्घनकारी हुन्-

فَمَنِ ابْتَغٰى وَرَآءَ ذٰلِكَ فَاُولٰٓئِكَ هُمُ الْعٰدُوْنَ ⑧

९. तथा जसले आफ्ना अमानत (धरोहर) र अङ्गीकारहरूको पालना गर्छन्,

وَالَّذِيْنَ هُمْ لِاَمٰنٰتِهِمْ وَعَهْدِهِمْ رٰعُوْنَ ⑨

१०. तथा जसले आफ्ना नमाजहरूको अनुष्ठान ध्यानपूर्वक गर्छन् ।

وَالَّذِيْنَ هُمْ عَلٰى صَلَوٰتِهِمْ يُحَافِظُوْنَ ⑩

११. यिनीहरू नै उत्तराधिकारी हुन्,

أُولَٰٓئِكَ هُمُ الْوَارِثُوْنَ ﴿١١﴾

१२. जो स्वर्गका उत्तराधिकारी हुनेछन् । त्यहाँ तिनीहरू सदा रहनेछन् ।

الَّذِيْنَ يَرِثُوْنَ الْفِرْدَوْسَ ؕ هُمْ فِيْهَا خٰلِدُوْنَ ﴿١٢﴾

१३. वस्तुत: मानिसलाई हामीले गिलो माटाको सारभागबाट सृष्टि गऱ्यौं;

وَلَقَدْ خَلَقْنَا الْاِنْسَانَ مِنْ سُلٰلَةٍ مِّنْ طِيْنٍ ﴿١٣﴾

१४. त्यसपछि उसलाई हामीले वीर्यको थोपोस्वरूप एउटा सुरक्षित स्थानमा राख्यौं;

ثُمَّ جَعَلْنٰهُ نُطْفَةً فِيْ قَرَارٍ مَّكِيْنٍ ﴿١٤﴾

१५. त्यसपछि वीर्यलाई हामीले एक रक्तपिण्डको नमूनामा परिणत गऱ्यौं; त्यसपछि त्यस रक्तपिण्डलाई एउटा - आकृतिविहीन) मासुको टुकामा परिणत गऱ्यौं; पुन: त्यस मासुको टुकालाई हड्डीमा परिणत गऱ्यौं; त्यसपछि हड्डीमा हामीले मासु चढायौं; तब हामीले त्यसलाई एउटा अर्कै सिर्जनास्वरूप विकास गऱ्यौं । अत: सर्वोत्तम सृष्टिकर्ता अल्लाह परम मङ्गलमय छन् ।

ثُمَّ خَلَقْنَا النُّطْفَةَ عَلَقَةً فَخَلَقْنَا الْعَلَقَةَ مُضْغَةً فَخَلَقْنَا الْمُضْغَةَ عِظٰمًا فَكَسَوْنَا الْعِظٰمَ لَحْمًا ۗ ثُمَّ اَنْشَاْنٰهُ خَلْقًا اٰخَرَ ؕ فَتَبٰرَكَ اللّٰهُ اَحْسَنُ الْخٰلِقِيْنَ ﴿١٥﴾

१६. त्यसपछि पुन: तिमीहरूले अवश्य मर्नु पर्नेछ ।

ثُمَّ اِنَّكُمْ بَعْدَ ذٰلِكَ لَمَيِّتُوْنَ ﴿١٦﴾

१७. पुन: पुनरुत्थानका दिन तिमीहरूलाई ब्युझाइनेछ ।

ثُمَّ اِنَّكُمْ يَوْمَ الْقِيٰمَةِ تُبْعَثُوْنَ ﴿١٧﴾

१८. तथा हामीले तिमीहरूमाथि एकमाथि अर्को गर्दै सातवटा (आकाशहरूका) तह बनाएका छौं, तथा सृष्टिका सम्बन्धमा हामी कदापि लापर्बाह हुदैनौं ।

وَلَقَدْ خَلَقْنَا فَوْقَكُمْ سَبْعَ طَرَآئِقَ ۖ وَمَا كُنَّا عَنِ الْخَلْقِ غٰفِلِيْنَ ﴿١٨﴾

१९. तथा हामीले आकाशबाट निर्धारित परिमाणमा पानी अवतीर्ण गऱ्यौं तथा त्यसलाई पृथ्वीमा सञ्चय गऱ्यौं- तथा निश्चय नै त्यस पानीलाई (उठाएर) लैजान पनि हामी पूर्ण सक्षम छौं ।

وَاَنْزَلْنَا مِنَ السَّمَآءِ مَآءًۢ بِقَدَرٍ فَاَسْكَنّٰهُ فِي الْاَرْضِ ۖ وَاِنَّا عَلٰى ذَهَابٍۢ بِهٖ لَقٰدِرُوْنَ ﴿١٩﴾

فَاَنْشَاْنَا لَكُمْ بِهٖ جَنّٰتٍ مِّنْ نَّخِيْلٍ وَّ اَعْنَابٍ ۘ لَكُمْ فِيْهَا فَوَاكِهُ كَثِيْرَةٌ وَّ مِنْهَا تَاْكُلُوْنَ ﴿۲۰﴾

२०. तथा त्यसद्वारा हामीले तिमीहरूका निम्ति खजूर र अङ्गुरका बगैंचाहरू उत्पन्न गऱ्यौं; त्यहाँ तिमीहरूका निम्ति प्रचुर फल उपलब्ध छन्; तथा तिनीहरूबाटै तिमीहरू खाने गर्छौं ।

وَ شَجَرَةً تَخْرُجُ مِنْ طُوْرِ سَيْنَآءَ تَنْۢبُتُ بِالدُّهْنِ وَصِبْغٍ لِّلْاٰكِلِيْنَ ﴿۲۱﴾

२१. तथा त्यो सिनाइ पर्वतमा उब्जने बृक्ष; जसले खाने व्यक्तिहरका निम्ति तेल र (विभिन्न) तरकारीहरू उत्पादन गर्छ ।

وَاِنَّ لَكُمْ فِي الْاَنْعَامِ لَعِبْرَةً ۚ نُسْقِيْكُمْ مِّمَّا فِيْ بُطُوْنِهَا وَ لَكُمْ فِيْهَا مَنَافِعُ كَثِيْرَةٌ وَّمِنْهَا تَاْكُلُوْنَ ﴿۲۲﴾

२२. तथा चौपायाहरूमा -पनि) तिमीहरूका निम्ति शिक्षा रहेको छ । हामी तिमीहरूलाई तिनीहरूका पेटमा रहेको पदार्थबाट पिउने (वस्तु) प्रदान गर्छौं तथा तिनीहरूमा तिमीहरूका निम्ति धेरै लाभदायक कुराहरू छन् तथा तिनीहरूमध्ये केहीलाई तिमीहरू खान्छौ (पनि);

وَعَلَيْهَا وَعَلَى الْفُلْكِ تُحْمَلُوْنَ ﴿۲۳﴾

२३. तथा तिनीहरूमाथि र जहाजमाथि तिमीहरूलाई सवार गराइन्छ ।

وَلَقَدْ اَرْسَلْنَا نُوْحًا اِلٰى قَوْمِهٖ فَقَالَ يٰقَوْمِ اعْبُدُوا اللّٰهَ مَا لَكُمْ مِّنْ اِلٰهٍ غَيْرُهٗ ۚ اَفَلَا تَتَّقُوْنَ ﴿۲۴﴾

२४. तथा नूहलाई हामीले उनका जातिका (मानिसहरू)तर्फ पठायौं, तथा उनले भने, "हे मेरा मानिसहरू हो, अल्लाहको उपासना गर; उनीबाहेक तिमीहरूको अन्य कोही उपास्य छैन । अत: के तिमीहरू धर्मनिष्ठ बन्दैनौ त?"

فَقَالَ الْمَلَؤُا الَّذِيْنَ كَفَرُوْا مِنْ قَوْمِهٖ مَا هٰذَآ اِلَّا بَشَرٌ مِّثْلُكُمْ ۙ يُرِيْدُ اَنْ يَّتَفَضَّلَ عَلَيْكُمْ ۚ وَلَوْ شَآءَ اللّٰهُ لَاَنْزَلَ مَلٰٓئِكَةً ۚ مَّا سَمِعْنَا بِهٰذَا فِيْٓ اٰبَآئِنَا الْاَوَّلِيْنَ ﴿۲۵﴾

२५. तथा उनका जातिका अविश्वासी मुखियाहरूले भने, "यो त तिमीहरू जस्तै (केवल) एउटा मानिस हो; उ स्वयम्लाई तिमीहरूभन्दा श्रेष्ठ तुल्याउन चाहन्छ । यदि अल्लाहले त्यही चाहेका भए त देवदूतहरूलाई अवतीर्ण गर्ने थिए । हामीले हाम्रा पूर्ववर्ती पुर्खाहरूमा यस्तो (कुरो) कहिल्यै सुनेका छैनौं

اِنْ هُوَ اِلَّا رَجُلٌۢ بِهٖ جِنَّةٌ فَتَرَبَّصُوْا بِهٖ حَتّٰى حِيْنٍ ﴿۲۶﴾

२६. "त्यो त केवल एउटा पागलपनले (सताइएको) व्यक्ति हो; त्यसकारण त्यसको

(परिणामका) सम्बन्धमा केही समय प्रतीक्षा गर ।"

قَالَ رَبِّ انْصُرْنِيْ بِمَا كَذَّبُوْنِ ﴿٢٦﴾

२७. उनले भने, "हे मेरा प्रतिपालक मेरो सहयोग गर, किनभने यिनीहरूले मसित मिथ्यावादीस्वरूप व्यवहार गरेका छन् ।"

فَاَوْحَيْنَاۤ اِلَيْهِ اَنِ اصْنَعِ الْفُلْكَ بِاَعْيُنِنَا وَوَحْيِنَا فَاِذَا جَآءَ اَمْرُنَا وَفَارَ التَّنُّوْرُ ۙ فَاسْلُكْ فِيْهَا مِنْ كُلٍّ زَوْجَيْنِ اثْنَيْنِ وَاَهْلَكَ اِلَّا مَنْ سَبَقَ عَلَيْهِ الْقَوْلُ مِنْهُمْ ۚ وَلَا تُخَاطِبْنِيْ فِي الَّذِيْنَ ظَلَمُوْا ۚ اِنَّهُمْ مُّغْرَقُوْنَ ﴿٢٧﴾

२८. अतः उनलाई हामीले (के भन्दै) आकाशवाणी गऱ्यौं (भने), "हाम्रा दृष्टिका सामुन्ने र हाम्रो आकाशवाणी (अनुसार) डुंगा (नाउ)निर्माण गर । तथा जब हाम्रो आदेश आउँछ, र (पृथ्वीमा रहेका) पानीका मुहानहरू फुट्ने छन्, तब तिमी हरेक प्रकारका जनावरहरूबाट दुई-दुई अर्थात् भाले-पोथीलाई तथा तिम्रा परिवारका सदस्यहरूलाई सिवाय ती व्यक्तिहरू जसबारे आदेश भइसकेको छ, त्यस डुंगामा सवार गराउ । तथा जसले अत्याचार गरेका छन् तिनीहरूबारे मसित कुनै वार्ता नगर; तिनीहरूलाई अवश्य डुबाइने छ ।

فَاِذَا اسْتَوَيْتَ اَنْتَ وَمَنْ مَّعَكَ عَلَى الْفُلْكِ فَقُلِ الْحَمْدُ لِلّٰهِ الَّذِيْ نَجّٰىنَا مِنَ الْقَوْمِ الظّٰلِمِيْنَ ﴿٢٨﴾

२९. "तथा जब तिमी र तिमीसित रहेका व्यक्तिहरू पूर्णरूपले डुंगामा सवार भएर बस्ने छौ तब भन, "सम्पूर्ण प्रशंसाका स्वामी तिनै अल्लाह रहेका छन् जसले हामीलाई अत्याचारी व्यक्तिहरूबाट बचाए ।"

وَقُلْ رَّبِّ اَنْزِلْنِيْ مُنْزَلًا مُّبٰرَكًا وَّاَنْتَ خَيْرُ الْمُنْزِلِيْنَ ﴿٢٩﴾

३०. "तथा भन, "हे मेरा प्रतिपालक मलाई मङ्गलमय अवस्थामा ओह्राल, किनभने तिमी नै(मानिसहरूलाई) सर्वोत्तम तरिकाले (सुरक्षित) धर्तीमा ओराल्ने गर्छौ ।"

اِنَّ فِيْ ذٰلِكَ لَاٰيٰتٍ وَّاِنْ كُنَّا لَمُبْتَلِيْنَ ﴿٣٠﴾

३१. वस्तुतः यस (घटना)मा अनेक चिह्नहरू रहेका छन् । तथा निश्चय नै हामी सधैं (मानिसहरूको) परीक्षा लिने गर्छौं

ثُمَّ اَنْشَاْنَا مِنْ بَعْدِهِمْ قَرْنًا اٰخَرِيْنَ ﴿٣١﴾

३२. त्यसपछि हामीले तिनीहरूपश्चात् अर्को पुस्तालाई हुर्कायौं ।

फَأَرْسَلْنَا فِيهِمْ رَسُولًا مِّنْهُمْ أَنِ اعْبُدُوا اللَّهَ مَا لَكُم مِّنْ إِلَٰهٍ غَيْرُهُ ۖ أَفَلَا تَتَّقُونَ ﴿٣٢﴾

३३. तथा हामीले तिनीहरूतर्फ तिनीहरूमध्येकै एकजना सन्देशवाहकलाई पठायौं (जसले भने), "अल्लाहको उपासना गर । उनीबाहेक तिमीहरूको अन्य कुनै उपास्य छैन । अतः के तिमीहरू अल्लाहसित डराउदैनौ त?"

وَقَالَ الْمَلَأُ مِن قَوْمِهِ الَّذِينَ كَفَرُوا وَكَذَّبُوا بِلِقَاءِ الْآخِرَةِ وَأَتْرَفْنَاهُمْ فِي الْحَيَاةِ الدُّنْيَا مَا هَٰذَا إِلَّا بَشَرٌ مِّثْلُكُمْ يَأْكُلُ مِمَّا تَأْكُلُونَ مِنْهُ وَيَشْرَبُ مِمَّا تَشْرَبُونَ ﴿٣٣﴾

३४. तथा उनका जातिका ती अविश्वासी व्यक्तिहरू, जसले परलोकमा हुने साक्षात्कारको अस्वीकार गर्थे तथा जसलाई हामीले यस संसारमा सुख-सुविधा उपलब्ध गराएका थियौं; तिनीहरूले भने, "त्यो त केवल तिमीहरूजस्तै एउटा मानिस हो । उसले त्यही वस्तुबाट खान्छ जुन वस्तु तिमीहरू खान्छौ, तथा त्यहीबाट पिउँछ जुन तिमीहरू पिउँछौं ।

وَلَئِنْ أَطَعْتُم بَشَرًا مِّثْلَكُمْ إِنَّكُمْ إِذًا لَّخَاسِرُونَ ﴿٣٤﴾

३५. "तथा यदि तिमीहरूले आफू जस्तै एउटा मानिसको अनुसरण गर्‍यौ भने, तिमीहरू अवश्य घाटाग्रस्थ व्यक्तिहरू बन्न पुग्नेछौ ।

أَيَعِدُكُمْ أَنَّكُمْ إِذَا مِتُّمْ وَكُنتُمْ تُرَابًا وَعِظَامًا أَنَّكُم مُّخْرَجُونَ ﴿٣٥﴾

३६. "के जब तिमीहरू मर्नेछौ र माटोधुलो र हड्डीमा परिणत हुनेछौ तिमीहरूलाई (पुनः) माथि निकालिनेछ भनी तिमीहरूलाई त्यसले डराउछ त ?"

هَيْهَاتَ هَيْهَاتَ لِمَا تُوعَدُونَ ﴿٣٦﴾

३७. जुन कुराको तिमीहरूसित वाचा गरिन्छ, त्यो (वास्तविकता भन्दा) धेरै-धेरै टाढाको कुरा हो ।

إِنْ هِيَ إِلَّا حَيَاتُنَا الدُّنْيَا نَمُوتُ وَنَحْيَا وَمَا نَحْنُ بِمَبْعُوثِينَ ﴿٣٧﴾

३८. "हाम्रो यो वर्तमान जीवन नै हामीले भोग्नु छ; हामीहरू यहीं मर्छौं र (यहीं) हामी जीवित रहन्छौं; तथा हाम्रो पुनरुत्थान कदापि हुनेछैन ।

إِنْ هُوَ إِلَّا رَجُلٌ افْتَرَىٰ عَلَى اللَّهِ كَذِبًا وَمَا نَحْنُ لَهُ بِمُؤْمِنِينَ ﴿٣٨﴾

३९. अल्लाहविरुद्ध मिथ्या गढ्ने यो एक्लो व्यक्ति रहेको छ; तथा यसप्रति हामी कदापि

विश्वास गर्नेछैनौं ।

قَالَ رَبِّ انْصُرْنِيْ بِمَا كَذَّبُوْنِ ﴿٣٩﴾

४०. उनले भने, "हे मेरा प्रतिपालक, तिनीहरूले मसित मिथ्यावादीस्वरूप व्यवहार गरेका छन् अतः तिमी मेरो सहयोग गर ।"

قَالَ عَمَّا قَلِيْلٍ لَّيُصْبِحُنَّ نٰدِمِيْنَ ﴿٤٠﴾

४१. (अल्लाहले) भने, "केही समयमै तिनीहरू अवश्य लज्जित हुनेछन् ।"

فَاَخَذَتْهُمُ الصَّيْحَةُ بِالْحَقِّ فَجَعَلْنٰهُمْ غُثَآءً ۚ فَبُعْدًا لِّلْقَوْمِ الظّٰلِمِيْنَ ﴿٤١﴾

४२. त्यसपछि साँचो प्रतिश्रुतिअनुसार तिनीहरूलाई गर्जनपूर्ण ध्वनिले समात्यो तथा हामीले तिनीहरूलाई (फ्याँकिएको) फोहोर-मैला(स्वरूप) बनायौं । अतः अत्याचारी व्यक्तिहरूमाथि अभिशाप परोस !

ثُمَّ اَنْشَاْنَا مِنْۢ بَعْدِهِمْ قُرُوْنًا اٰخَرِيْنَ ﴿٤٢﴾

४३. पुनः तिनीहरूपश्चात् हामीले अन्य पुस्ताहरूलाई हुर्कायौं ।

مَا تَسْبِقُ مِنْ اُمَّةٍ اَجَلَهَا وَ مَا يَسْتَاْخِرُوْنَ ﴿٤٣﴾

४४. कुनै जाति पनि आफ्नो निर्धारित मियादलाई नाघेर अघि बढ्न सक्दैन् न त (त्यो समय)भन्दा तिनीहरू पछि नै रहन सक्नेछन् ।

ثُمَّ اَرْسَلْنَا رُسُلَنَا تَتْرَا ؕ كُلَّمَا جَآءَ اُمَّةً رَّسُوْلُهَا كَذَّبُوْهُ فَاَتْبَعْنَا بَعْضَهُمْ بَعْضًا وَّ جَعَلْنٰهُمْ اَحَادِيْثَ ۚ فَبُعْدًا لِّقَوْمٍ لَّا يُؤْمِنُوْنَ ﴿٤٤﴾

४५. त्यसपछि क्रमैसित हामीले आफ्ना सन्देशवाहकहरूलाई पठायौं । जब जब कुनै जातिसमक्ष तिनीहरूका सन्देशवाहकको आगमन भयो तिनीहरूले उनीसित मिथ्यावादीस्वरूप व्यवहार गरे । अतः हामीले तिनीहरूलाई एकपछि अर्को गर्दै (ध्वंस्त गऱ्यौं) तथा तिनीहरूलाई (अतीतका) कथास्वरूप बनायौं । अतः अविश्वासी मानिसहरूमाथि अभिशाप परोस् !

ثُمَّ اَرْسَلْنَا مُوْسٰى وَ اَخَاهُ هٰرُوْنَ ۙ بِاٰيٰتِنَا وَ سُلْطٰنٍ مُّبِيْنٍ ﴿٤٥﴾

४६. त्यसपछि हामीले मूसा र उनका भाइ हारुनलाई आफ्ना चिह्नहरू र स्पष्ट तर्क सहित पठायौं;

اِلٰى فِرْعَوْنَ وَ مَلَا۟ئِهٖ فَاسْتَكْبَرُوْا وَ كَانُوْا قَوْمًا عَالِيْنَ ﴿٤٦﴾

४७. फिरौन र उसका मुखियाहरूतर्फ (पठायौं) परन्तु तिनीहरूले अहङ्कारपूर्ण

व्यवहार गर तथा तिनीहरू घमण्डी व्यक्तिहरू थिए ।

فَقَالُوٓا أَنُؤْمِنُ لِبَشَرَيْنِ مِثْلِنَا وَقَوْمُهُمَا لَنَا عَٰبِدُونَ ﴿٤٨﴾

४८. तथा तिनीहरूले भने, "यी हामीजस्तै दुइजना व्यक्तिहरू माथि जसका मानिसहरू वस्तुतः हाम्रा दास रहेका छन्, के हामी विश्वास गर्न सक्छौं र?"

فَكَذَّبُوهُمَا فَكَانُوا مِنَ الْمُهْلَكِينَ ﴿٤٩﴾

४९. अतः तिनीहरूले उनीहरू दुबैलाई मिथ्यावादी ठहऱ्याए, तथा तिनीहरू विध्वंस भएका मानिसहरूमध्ये हुन पुगे ।

وَلَقَدْ ءَاتَيْنَا مُوسَى الْكِتَٰبَ لَعَلَّهُمْ يَهْتَدُونَ ﴿٥٠﴾

५०. तथा हामीले मूसालाई पुस्तकप्रदान गऱ्यौं ताकि तिनीहरूले सन्मार्ग प्राप्त गरून्

وَجَعَلْنَا ابْنَ مَرْيَمَ وَأُمَّهُۥٓ ءَايَةً وَءَاوَيْنَٰهُمَآ إِلَىٰ رَبْوَةٍ ذَاتِ قَرَارٍ وَمَعِينٍ ﴿٥١﴾

५१. तथा हामीले मरियमपुत्र र उनकी मातालाई एउटा चिह्नस्वरूप बनायौं, तथा तिनीहरूलाई बचायौ तथा एउटा आरामदायी उपत्यकाको बग्ने (पानीका) मूलहरू रहेको उच्च स्थानमा (पुग्न तिनीहरूलाई सहयोग गऱ्यौं) ।

يَٰٓأَيُّهَا الرُّسُلُ كُلُوا مِنَ الطَّيِّبَٰتِ وَاعْمَلُوا صَٰلِحًا إِنِّي بِمَا تَعْمَلُونَ عَلِيمٌ ﴿٥٢﴾

५२. हे सन्देशवाहकहरू हो, जुन वस्तुहरू पवित्र छन् त्यही खाऊ तथा पुण्यकार्य गर । वस्तुतः जुन कार्य तिमीहरू गर्छौ त्यसप्रति म पूर्ण विदित रहेको छु ।

وَإِنَّ هَٰذِهِۦٓ أُمَّتُكُمْ أُمَّةً وَٰحِدَةً وَأَنَا رَبُّكُمْ فَاتَّقُونِ ﴿٥٣﴾

५३. तथा तिमीहरूको यो सम्प्रदाय एउटै सम्प्रदाय हो (भनी जान), तथा म तिमीहरूको प्रतिपालक हुँ । त्यसकारण केवल मसित डराऊ ।

فَتَقَطَّعُوٓا أَمْرَهُم بَيْنَهُمْ زُبُرًا كُلُّ حِزْبٍۭ بِمَا لَدَيْهِمْ فَرِحُونَ ﴿٥٤﴾

५४. तिनीहरूले आफ्ना मामिलाहरूलाई परस्परमा टुक्रा टुक्रा गरी विच्छिन्न पारे, हरेक जमात आफुसित रहेको (वस्तु)लाई लिएर प्रसन्न रहेको छ ।

فَذَرْهُمْ فِي غَمْرَتِهِمْ حَتَّىٰ حِينٍ ﴿٥٥﴾

५५. अतः तिनीहरूलाई आफ्नो अन्योल अवस्थामा केही समय रहन देऊ ।

اَيَحْسَبُوْنَ اَنَّمَا نُمِدُّهُمْ بِهٖ مِنْ مَّالٍ وَّ بَنِيْنَ ﴿٥٥﴾

५६. जुन सम्पत्ति र सन्तानद्वारा हामी तिनीहरूलाई सहयोग गर्छौं; के तिनीहरू ठान्छन् ।

نُسَارِعُ لَهُمْ فِى الْخَيْرٰتِ ؕ بَلْ لَّا يَشْعُرُوْنَ ﴿٥٦﴾

५७. हामी तिनीहरूलाई पुण्यतर्फ अग्रसर गराउन हत्तार गरिरहेछौं? होइन, अपितु तिनीहरू बुझ्दैनन् ।

اِنَّ الَّذِيْنَ هُمْ مِّنْ خَشْيَةِ رَبِّهِمْ مُّشْفِقُوْنَ ﴿٥٧﴾

५८. निश्चय नै, ती व्यक्तिहरू जो आफ्ना प्रतिपालकको भयका कारण सदा (पापविरुद्ध) सावधान रहन्छन् ।

وَالَّذِيْنَ هُمْ بِاٰيٰتِ رَبِّهِمْ يُؤْمِنُوْنَ ﴿٥٨﴾

५९. तथा जसले आफ्ना प्रतिपालकका निर्देशनहरूप्रति विश्वास गर्छन्,

وَالَّذِيْنَ هُمْ بِرَبِّهِمْ لَا يُشْرِكُوْنَ ﴿٥٩﴾

६०. तथा जसले आफ्ना प्रतिपालकका भागीदार गर्दैनन्,

وَالَّذِيْنَ يُؤْتُوْنَ مَآ اٰتَوْا وَّ قُلُوْبُهُمْ وَجِلَةٌ اَنَّهُمْ اِلٰى رَبِّهِمْ رٰجِعُوْنَ ﴿٦٠﴾

६१. तथा जसले आफूलाई प्राप्त सम्पत्तिबाट दान दिने गर्छन् अतः आफ्ना प्रतिपालकतर्फ तिनीहरूले फर्कनु पर्नेछ भन्ने कुराप्रति तिनीहरूको हृदय भयभीत रहन्छ ।

اُولٰٓئِكَ يُسَارِعُوْنَ فِى الْخَيْرٰتِ وَهُمْ لَهَا سٰبِقُوْنَ ﴿٦١﴾

६२. ती उनै व्यक्तिहरू हुन जसले पुण्यकार्य गर्नमा शीघ्रता अबलम्बन गर्छन् तथा यिनीहरू नै त्यसतर्फ अग्रसर रहन्छन् ।

وَلَا نُكَلِّفُ نَفْسًا اِلَّا وُسْعَهَا وَلَدَيْنَا كِتٰبٌ يَّنْطِقُ بِالْحَقِّ وَهُمْ لَا يُظْلَمُوْنَ ﴿٦٢﴾

६३. तथा कुनै ज्यानमाथि हामी त्यसको क्षमता- भन्दा अधिक बोझ लाद्दैनौं, तथा हामीसित एउटा यस्तो पुस्तक छ जसले सत्य प्रकट गर्छ, तथा तिनीहरूमाथि अत्याचार हुनेछैन ।

بَلْ قُلُوْبُهُمْ فِىْ غَمْرَةٍ مِّنْ هٰذَا وَلَهُمْ اَعْمَالٌ مِّنْ دُوْنِ ذٰلِكَ هُمْ لَهَا عٰمِلُوْنَ ﴿٦٣﴾

६४. होइन, (अपितु) तिनीहरूको हृदय त्यस (पुस्तक)का सम्बन्धमा पूर्णरूपले लापर्बाह रहेको छ तथा त्यसबाहेक तिनीहरूका अन्यान्य यस्ता कार्यहरू रहेका छन्ने जसमा तिनीहरू लिप्त रहन्छन्;

६५. यसै क्रममा जब हामी ती व्यक्तिहरूमध्ये सुखभोगमा लिप्त रहेका व्यक्तिहरूलाई दण्डद्वारा पक्रन्छौं, सुन, तब तिनीहरू सहयोगका निम्ति चिच्याउँछन् ।

حَتّٰىٓ اِذَآ اَخَذْنَا مُتْرَفِيْهِمْ بِالْعَذَابِ اِذَا هُمْ يَجْـَٔرُوْنَ ﴿٦٤﴾

६६. "आज तिमीहरू सहयोग प्राप्तिका निम्ति नचिच्याओ, निश्चय नै तिमीहरूलाई हाम्रो सहयोग प्राप्त हुनेछैन ।

لَا تَجْـَٔرُوا الْيَوْمَ ۫ اِنَّكُمْ مِّنَّا لَا تُنْصَرُوْنَ ﴿٦٥﴾

६७. "वस्तुतः जब तिमीहरूसमक्ष मेरा निर्देशनहरूको पाठ गरिन्थ्यो, तब तिमीहरू पिठ्यूँ देखाएर (अर्कोतर्फ) फर्कने गर्थ्यौ,

قَدْ كَانَتْ اٰيٰتِيْ تُتْلٰى عَلَيْكُمْ فَكُنْتُمْ عَلٰٓى اَعْقَابِكُمْ تَنْكِصُوْنَ ﴿٦٦﴾

६८. "घमण्डमा ठूला (मानिस) बनी, यसका (कुरानका) सम्बन्धमा रात्रि समयमा व्यर्थ कुरा र कहानी बनाउदै (फर्कन्थ्यौ) ।"

مُسْتَكْبِرِيْنَ ۖ بِهٖ سٰمِرًا تَهْجُرُوْنَ ﴿٦٧﴾

६९. अतः के तिनीहरूले त्यो (ईश्वरीय) बचनप्रति ध्यान दिएका छैनन् अथवा के तिनीहरूसमक्ष यस्ता कुराको आगमन भएको छ जुनकुरा तिनीहरूका पूर्ववर्ती पुर्खाहरू समक्ष आएको थिएन?

اَفَلَمْ يَدَّبَّرُوا الْقَوْلَ اَمْ جَآءَهُمْ مَّا لَمْ يَاْتِ اٰبَآءَهُمُ الْاَوَّلِيْنَ ﴿٦٨﴾

७०. अथवा के तिनीहरूले आफ्ना सन्देशवाहकलाई चिन्न सकेका छैनन्, (फलस्वरूप) तिनीहरू उनलाई अस्वीकार गरिरहेछन्?

اَمْ لَمْ يَعْرِفُوْا رَسُوْلَهُمْ فَهُمْ لَهٗ مُنْكِرُوْنَ ﴿٦٩﴾

७१. अथवा त्यसमा पागलपन छ भनी तिनीहरू भन्छन् त? होइन, अपितु उनले तिनीहरू समक्ष सत्य लिएर आएका छन्, तथा तिनीहरूमध्ये अधिकतर व्यक्तिहरू भने सत्यलाई घृणा गर्छन् ।

اَمْ يَقُوْلُوْنَ بِهٖ جِنَّةٌ ۭ بَلْ جَآءَهُمْ بِالْحَقِّ وَاَكْثَرُهُمْ لِلْحَقِّ كٰرِهُوْنَ ﴿٧٠﴾

७२. तथा यदि सत्यले तिनीहरूका अभिलाषाहरूको अनुसरण गरेको भए त आकाशमण्डल र पृथ्वी तथा तिनीहरूबीच रहेका सम्पूर्ण वस्तुहरू विश्रृङ्खल हुन पुग्ने थिए । होइन, अपितु हामीले तिनीहरूसमक्ष

وَلَوِ اتَّبَعَ الْحَقُّ اَهْوَآءَهُمْ لَفَسَدَتِ السَّمٰوٰتُ وَالْاَرْضُ وَمَنْ فِيْهِنَّ ۭ بَلْ اَتَيْنٰهُمْ بِذِكْرِهِمْ فَهُمْ عَنْ ذِكْرِهِمْ مُّعْرِضُوْنَ ﴿٧١﴾

तिनीहरूकै उपदेश ल्याएकाछौं, परन्तु तिनीहरू आफ्नै उपदेशबाट (अहिले) विमुख भइरहेछन् ।

أَمْ تَسْـَٔلُهُمْ خَرْجًا فَخَرَاجُ رَبِّكَ خَيْرٌ ۖ وَهُوَ خَيْرُ الرَّٰزِقِينَ ﴿٧٢﴾

७२. अथवा के तिमी तिनीहरूसित कुनै पारिश्रमिक माग्ने गर्छौं? परन्तु तिम्रा प्रतिपालकको प्रतिदान नै सार्वोत्तम रहेको छ; तथा उनी नै सर्वोत्तम जीविका प्रदानकारी रहेकाछन् ।

وَإِنَّكَ لَتَدْعُوهُمْ إِلَىٰ صِرَٰطٍ مُّسْتَقِيمٍ ﴿٧٣﴾

७४. तथा तिमी निश्चयपूर्वक तिनीहरूलाई सन्मार्गतर्फ आह्वान गर्छौं ।

وَإِنَّ الَّذِينَ لَا يُؤْمِنُونَ بِالْـَٔاخِرَةِ عَنِ الصِّرَٰطِ لَنَٰكِبُونَ ﴿٧٤﴾

७५. तथा जसले परलोकप्रति विश्वास गर्दैनन् तिनीहरू त्यस सन्मार्गबाट हट्ने व्यक्तिहरू हुन् ।

وَلَوْ رَحِمْنَٰهُمْ وَكَشَفْنَا مَا بِهِم مِّن ضُرٍّ لَّلَجُّوا فِي طُغْيَٰنِهِمْ يَعْمَهُونَ ﴿٧٥﴾

७६. तथा यदि हामीले तिनीहरूमाथि अनुग्रह गरेको भए र तिनीहरूलाई तिनीहरूको सङ्कटबाट मुक्त गरेको भए ता तिनीहरू आफ्नो उल्लङ्घनकार्यमा अझ अन्धाधुन्ध (गतिमा) अघि बढ्ने थिए ।

وَلَقَدْ أَخَذْنَٰهُم بِالْعَذَابِ فَمَا اسْتَكَانُوا لِرَبِّهِمْ وَمَا يَتَضَرَّعُونَ ﴿٧٦﴾

७७. तिनीहरूलाई हामीले दण्डद्वारा समात्यौं, परन्तु तिनीहरू आफ्ना प्रतिपालक समक्ष नम्रतापूर्वक झुकेनन्, न त तिनीहरूले -विनयपूर्वक) प्रार्थना नै गरे ।

حَتَّىٰٓ إِذَا فَتَحْنَا عَلَيْهِم بَابًا ذَا عَذَابٍ شَدِيدٍ إِذَا هُمْ فِيهِ مُبْلِسُونَ ﴿٧٧﴾

७८. यसै कममा, जब हामी तिनीहरूप्रति कठोर दण्डको ढोका खोल्छौं तब सुन, तिनीहरू निराश भएर बस्न पुग्दछन् ।

وَهُوَ الَّذِيٓ أَنشَأَ لَكُمُ السَّمْعَ وَالْأَبْصَٰرَ وَالْأَفْـِٔدَةَ ۚ قَلِيلًا مَّا تَشْكُرُونَ ﴿٧٨﴾

७९. तथा ती उनी नै हुन् जसले तिमीहरूका निम्ति कान, आँखा र हृदयको सिर्जना गरे; (परन्तु) तिमीहरू कमै कृतज्ञ बन्छौ ।

وَهُوَ الَّذِي ذَرَأَكُمْ فِي الْأَرْضِ وَإِلَيْهِ تُحْشَرُونَ ﴿٧٩﴾

८०. तथा ती उनी नै हुन जसले पृथ्वीमा तिमीहरूको सङ्ख्या बृद्धि गरे, तथा

उनीसमक्ष नै तिमीहरूलाई एकत्रित गरिनेछ

وَ هُوَ الَّذِيْ يُحْيٖ وَ يُمِيْتُ وَ لَهُ اخْتِلَافُ الَّيْلِ وَ النَّهَارِ ؕ اَفَلَا تَعْقِلُوْنَ﴿۸۰﴾

८१. ती उनी नै हुन् जसले जीवनदान गर्छन् तथा मृत्यु प्रदान गर्छन्, तथा रात्रि र दिनको परिवर्तनमा उनकै हात रहेको छ । अतः के तिमीहरू बुझ्दैनौ त?

بَلْ قَالُوْا مِثْلَ مَا قَالَ الْاَوَّلُوْنَ﴿۸۱﴾

८२. परन्तु तिनीहरू त्यस्तै कुरा गर्छन् जस्ता कुरा पहिलाका मानिसहरू गर्थे ।

قَالُوْٓا ءَاِذَا مِتْنَا وَ كُنَّا تُرَابًا وَّ عِظَامًا ءَاِنَّا لَمَبْعُوْثُوْنَ﴿۸۲﴾

८३. तिनीहरू भन्छन्, "के ! जब हामी मर्छौं र धुलो माटो र हड्डीमा परिणत हुन्छौं तब के हाम्रो पुनरुत्थान हुनेछ?

لَقَدْ وُعِدْنَا نَحْنُ وَ اٰبَآؤُنَا هٰذَا مِنْ قَبْلُ اِنْ هٰذَآ اِلَّآ اَسَاطِيْرُ الْاَوَّلِيْنَ﴿۸۳﴾

८४. यसअघि यसै कुराको हामीलाई र हाम्रा पितृहरूलाई वचन दिइएको थियो । यो ता प्राचीन मानिसहरूका कथाबाहेक केही होइन ।"

قُلْ لِّمَنِ الْاَرْضُ وَ مَنْ فِيْهَآ اِنْ كُنْتُمْ تَعْلَمُوْنَ﴿۸۴﴾

८५. तिमी भन, "यदि तिमीहरू जान्दछौ भने पृथ्वी तथा त्यसमा रहेका वस्तुहरू कसका हुन्?"

سَيَقُوْلُوْنَ لِلّٰهِ ؕ قُلْ اَفَلَا تَذَكَّرُوْنَ﴿۸۵﴾

८६. तिनीहरूले भन्नेछन्, "अल्लाहकै हुन् ।" तिमी भन, "तथापि के तिमीहरू उपदेश ग्रहण गर्दैनौ त?"

قُلْ مَنْ رَّبُّ السَّمٰوٰتِ السَّبْعِ وَ رَبُّ الْعَرْشِ الْعَظِيْمِ﴿۸۶﴾

८७. तिमी भन, "सात आकाशमण्डल तथा महान सिंहासनका स्वामी को हुन् त?"

سَيَقُوْلُوْنَ لِلّٰهِ ؕ قُلْ اَفَلَا تَتَّقُوْنَ﴿۸۷﴾

८८. तिनीहरूले भन्नेछन्, "ती (सबै) अल्लाहकै हुन् ।" तिमी भन, "अतः के तिमीहरू डराउँदै जीवनयापन गर्दैनौ त?"

قُلْ مَنْۢ بِيَدِهٖ مَلَكُوْتُ كُلِّ شَيْءٍ وَّ هُوَ يُجِيْرُ وَ لَا يُجَارُ عَلَيْهِ اِنْ كُنْتُمْ تَعْلَمُوْنَ﴿۸۸﴾

८९. तिमी भन, "यदि तिमीहरू जान्दछौ भने भन सम्पूर्ण वस्तुहरूमाथि कसको शासन चल्छ र कसले आश्रय दिन्छन्, परन्तु ती को हुन् जसका विरुद्ध कसैले आश्रय दिन सक्दैन?"

سَيَقُوْلُوْنَ لِلّٰهِ ۚ قُلْ فَاَنّٰى تُسْحَرُوْنَ ﴿٨٩﴾

९०. तिनीहरूले भन्नेछन्, "(यी सबै कुरा) अल्लाहकै (हुन्) ।" तिमी भन, "त्यसोभए तिमीहरूलाई कसरी बहकाइदैछ त?"

بَلْ اَتَيْنٰهُمْ بِالْحَقِّ وَاِنَّهُمْ لَكٰذِبُوْنَ ﴿٩٠﴾

९१. वस्तुतः हामीले तिनीहरूसमक्ष सत्य प्रस्तुत गरेकाछौं तथा तिनीहरू निश्चयपूर्वक मिथ्यावादी हुन् ।

مَا اتَّخَذَ اللّٰهُ مِنْ وَّلَدٍ وَّمَا كَانَ مَعَهٗ مِنْ اِلٰهٍ اِذًا لَّذَهَبَ كُلُّ اِلٰهٍۢ بِمَا خَلَقَ وَلَعَلَا بَعْضُهُمْ عَلٰى بَعْضٍ ۚ سُبْحٰنَ اللّٰهِ عَمَّا يَصِفُوْنَ ﴿٩١﴾

९२. अल्लाहले न स्वयम्का निम्ति कुनै पुत्र ग्रहण गरेका छन् न त उनीसित -अन्य) कोही उपास्य नै रहेको छ, यदि त्यसै हुने हो भने ता प्रत्येक उपास्यले आफ्नो सृष्टिलाई लिएर अलग्गिने थियो, तथा तिनीहरूमध्ये केहीले अन्य केहीलाई बलपूर्वक आफ्नो अधीनस्थ गर्ने थिए । अल्लाह ती सबै कुराहरूबाट धेरै माथि र परम पवित्र छन् जुन (कुराहरू) तिनीहरू (उनका सम्बन्धमा) गढ्ने गर्छन् ।

عٰلِمِ الْغَيْبِ وَالشَّهَادَةِ فَتَعٰلٰى عَمَّا يُشْرِكُوْنَ ﴿٩٢﴾

९३. अदृश्य र दृश्य कुराहरूका ज्ञाता ! उनी ती (सबै) वस्तुहरूबाट धेरै माथि छन् जसलाई तिनीहरू (उनका) सहभागी बनाउने गर्छन् ।

قُلْ رَّبِّ اِمَّا تُرِيَنِّيْ مَا يُوْعَدُوْنَ ﴿٩٣﴾

९४. तिमी भन, "हे मेरा प्रतिपालक जुन कुराद्वारा तिनीहरूलाई धम्क्याइएको छ यदि त्यो कुरा तिमी मलाई देखाउँथ्यौ भने,

رَبِّ فَلَا تَجْعَلْنِيْ فِى الْقَوْمِ الظّٰلِمِيْنَ ﴿٩٤﴾

९५. "हे मेरा प्रतिपालक, त्यस अवस्थामा मलाई अत्याचारी व्यक्तिहरूसित नराख ।"

وَاِنَّا عَلٰٓى اَنْ نُّرِيَكَ مَا نَعِدُهُمْ لَقٰدِرُوْنَ ﴿٩٥﴾

९६. जुन कुराद्वारा हामीले तिनीहरूलाई सावधान गरेका छौं त्यो कुरा तिमीहरूलाई देखाउन हामी अवश्य सक्षम छौं ।

اِدْفَعْ بِالَّتِيْ هِيَ اَحْسَنُ السَّيِّئَةَ ۚ نَحْنُ اَعْلَمُ بِمَا يَصِفُوْنَ ﴿٩٦﴾

९७. उत्तम कुराद्वारा निकृष्ट कुराको निवारण गर । जुन (कुराहरूको) तिनीहरू आरोप लगाउँछन् तिनीहरूप्रति हामी पूर्ण

परिज्ञात छौं ।

وَ قُلْ رَّبِّ اَعُوْذُبِكَ مِنْ هَمَزٰتِ الشَّيٰطِيْنِ ﴿٩٨﴾

९८. तथा तिमी भन, "हे मेरा प्रतिपालक, सैतानको कुप्रेरणाबाट म तिम्रो शरण चाहन्छु

وَاَعُوْذُبِكَ رَبِّ اَنْ يَّحْضُرُوْنِ ﴿٩٩﴾

९९. "तथा हे मेरा प्रतिपालक, तिनीहरू मेरा निकट आउलान् कि भनी म तिम्रो शरण चाहन्छु ।"

حَتّٰٓى اِذَا جَآءَ اَحَدَهُمُ الْمَوْتُ قَالَ رَبِّ ارْجِعُوْنِ ﴿١٠٠﴾

१००. अतः जब तिनीहरूमध्ये कसैको मृत्यु उपस्थित हुन्छ (तब) उसले (बिलौना गर्दै) के भन्छ भने, "हे मेरा प्रतिपालक, मलाई फर्काइ देउ,

لَعَلِّيْٓ اَعْمَلُ صَالِحًا فِيْمَا تَرَكْتُ كَلَّا ؕ اِنَّهَا كَلِمَةٌ هُوَ قَآئِلُهَا ؕ وَ مِنْ وَّرَآئِهِمْ بَرْزَخٌ اِلٰى يَوْمِ يُبْعَثُوْنَ ﴿١٠١﴾

१०१. "ताकि मैले (पछि) छाडेर आएको (जीवन)मा फर्किएर म पुण्य (कार्यहरू) गर्न सकूँ ।" कदापि हुनसक्दैन, यो ता त्यसको मुखको व्यर्थ कुरो मात्र हो । जब तिनीहरूको पुनरुत्थान हुनेछ त्यसदिनसम्मका निम्ति तिनीहरूका पछिल्तिर एउटा बाधक रहेको छ ।

فَاِذَا نُفِخَ فِي الصُّوْرِ فَلَآ اَنْسَابَ بَيْنَهُمْ يَوْمَئِذٍ وَّلَا يَتَسَآءَلُوْنَ ﴿١٠٢﴾

१०२. तथा जब बिगुल बजाइनेछ, त्यसदिन न तिनीहरूमध्ये कुनै नातेदारी रहनेछ, न त तिनीहरूले एकअर्काको हालचाल सोध्नेछन्

فَمَنْ ثَقُلَتْ مَوَازِيْنُهٗ فَاُولٰٓئِكَ هُمُ الْمُفْلِحُوْنَ ﴿١٠٣﴾

१०३. तब जसको (कार्यहरूको) पल्ला गहकिलो हुनेछ (अवश्य) तिनीहरू नै कृतार्थ हुनेछन्,

وَمَنْ خَفَّتْ مَوَازِيْنُهٗ فَاُولٰٓئِكَ الَّذِيْنَ خَسِرُوْٓا اَنْفُسَهُمْ فِيْ جَهَنَّمَ خٰلِدُوْنَ ﴿١٠٤﴾

१०४. परन्तु ती व्यक्तिहरू जसको पुण्यकर्मको पल्ला हलुको हुन्छ – तिनीहरू नै ती व्यक्तिहरू हुन् जसले आफ्नो आत्मालाई नष्ट गरेका छन्, तिनीहरू नर्कमा बसोबास गर्नेछन् ।

تَلْفَحُ وُجُوْهَهُمُ النَّارُ وَ هُمْ فِيْهَا كٰلِحُوْنَ ﴿١٠٥﴾

१०५. अग्निले तिनीहरूको मुहार झिल्स्याउने छ, तथा त्यहाँ तिनीहरू

(आन्तरिक पीडाले) मुख खुम्चयाउने छन् ।

أَلَمْ تَكُنْ آيَاتِي تُتْلَىٰ عَلَيْكُمْ فَكُنتُم بِهَا تُكَذِّبُونَ ﴿١٠٦﴾

१०६. “के तिमीहरूसमक्ष मेरा निर्देशनहरूको पाठ गरिँदैनथ्यो, र तिमीहरू तिनीहरूप्रति मिथ्या कुराहरूसरह व्यवहार गर्दैनथ्यौ,”

قَالُوا رَبَّنَا غَلَبَتْ عَلَيْنَا شِقْوَتُنَا وَكُنَّا قَوْمًا ضَالِّينَ ﴿١٠٧﴾

१०७. तिनीहरूले भन्नेछन्, “हे हाम्रा प्रतिपालक हाम्रै दुष्टताले हामीलाई बशीभूत गरेको थियो, तथा हामी एउटा पथभ्रष्ट जमात थियौं ।

رَبَّنَا أَخْرِجْنَا مِنْهَا فَإِنْ عُدْنَا فَإِنَّا ظَالِمُونَ ﴿١٠٨﴾

१०८. “हे हाम्रा प्रतिपालक. हामीलाई यसबाट बाहिर निकाल, त्यसपछि यदि हामी (अवज्ञा तर्फ) फर्कियौं भने, हामी अवश्य अत्याचारी हुनेछौं ।”

قَالَ اخْسَئُوا فِيهَا وَلَا تُكَلِّمُونِ ﴿١٠٩﴾

१०९. (अल्लाहले) भन्नेछन्, “तिमीहरू त्यसैमा गइहाल र मसित कुनै कुरा नगर ।

إِنَّهُ كَانَ فَرِيقٌ مِّنْ عِبَادِي يَقُولُونَ رَبَّنَا آمَنَّا فَاغْفِرْ لَنَا وَارْحَمْنَا وَأَنتَ خَيْرُ الرَّاحِمِينَ ﴿١١٠﴾

११०. “मेरा भृत्यहरूमध्ये एउटा यस्तो समूह थियो जसले के भन्थ्यो भने, “हे हाम्रा प्रतिपालक. हामी विश्वास गर्छौं, त्यसकारण (हाम्रा पापहरू) हामीलाई क्षमा प्रदान गर, तथा हामीमाथि दया गर, किनभने दया गर्नेहरूमा तिमी नै सर्वश्रेष्ठ दयालु रहेकाछौ ।”

فَاتَّخَذْتُمُوهُمْ سِخْرِيًّا حَتَّىٰ أَنسَوْكُمْ ذِكْرِي وَكُنتُم مِّنْهُمْ تَضْحَكُونَ ﴿١١١﴾

१११. “परन्तु तिमीहरूले उनीहरूलाई ठट्टाका साधन बनायौ अत: तिनीहरू नै मेरो स्मरण गर्नबाट तिमीहरूलाई भुलाउने कारण बने र तिमीहरू (निरन्तर) तिनीहरूप्रति ठट्टा गर्नमा व्यस्त रह्यौ ।

إِنِّي جَزَيْتُهُمُ الْيَوْمَ بِمَا صَبَرُوا أَنَّهُمْ هُمُ الْفَائِزُونَ ﴿١١٢﴾

११२. “तिनीहरूको धैर्यताको कारण नै आज मैले तिनीहरूलाई पुरस्कृत गरेको हुँ अत: केवल तिनीहरू नै कृतार्थ हुन पुगेका छन् ।”

قٰلَ كَمۡ لَبِثۡتُمۡ فِى الۡاَرۡضِ عَدَدَ سِنِيۡنَ ۝١١٣

११३. (अल्लाहले) भन्नेछन्, "तिमीहरू कति वर्ष पृथ्वीमा रहेका थियौ?"

قَالُوۡا لَبِثۡنَا يَوۡمًا اَوۡ بَعۡضَ يَوۡمٍ فَسۡـَٔلِ الۡعَآدِّيۡنَ ۝١١٤

११४. तिनीहरले भन्नेछन्, "हामी एकदिन अथवा दिनको केही भागसम्म रहेका थियौं, परन्तु तिमी गणनाकारीहरूलाई सोध ।"

قٰلَ اِنۡ لَّبِثۡتُمۡ اِلَّا قَلِيۡلًا لَّوۡ اَنَّكُمۡ كُنۡتُمۡ تَعۡلَمُوۡنَ ۝١١٥

११५. उनले भन्नेछन्, "यदि तिमीहरू साँचै नै जान्दछौ भने, तिमीहरू केवल केही क्षण (त्यहाँ) रहेका थियौ ।

اَفَحَسِبۡتُمۡ اَنَّمَا خَلَقۡنٰكُمۡ عَبَثًا وَّاَنَّكُمۡ اِلَيۡنَا لَا تُرۡجَعُوۡنَ ۝١١٦

११६. "अतः के हामीले तिमीहरूलाई निरर्थक सृष्टि गरेका थियौं, तथा तिमीहरूलाई हामीतर्फ फर्काएर ल्याइने छैन भनी तिमीहरूले सोचेका थियौ ?"

فَتَعٰلَى اللّٰهُ الۡمَلِكُ الۡحَـقُّ‌ ۚ لَاۤ اِلٰهَ اِلَّا هُوَ‌ ۚ رَبُّ الۡعَرۡشِ الۡكَرِيۡمِ ۝١١٧

११७. अतः अल्लाह परम मर्यादायुक्त, प्रकृत सम्राट रहेका छन् । उनीबाहेक अन्य कोही उपास्य छैन, उनी नै महान गौरवमय सिंहासनका स्वामी हुन् ।

وَمَنۡ يَّدۡعُ مَعَ اللّٰهِ اِلٰهًا اٰخَرَ ۙ لَا بُرۡهَانَ لَهٗ بِهٖ ۙ فَاِنَّمَا حِسَابُهٗ عِنۡدَ رَبِّهٖ‌ ؕ اِنَّهٗ لَا يُفۡلِحُ الۡـكٰفِرُوۡنَ ۝١١٨

११८. तथा जसले अल्लाहबाहेक अन्य यस्तो उपास्यलाई पुकार्छ, जसको उससित कुनै प्रमाण छैन, त्यस व्यक्तिले आफ्नो हिसाब उसका प्रतिपालकका जुनाफमा बुझाउनेछ । निश्चय नै अविश्वासी व्यक्तिहरू कदापि कृतार्थ हुने छैनन् ।

وَقُلْ رَّبِّ اغۡفِرۡ وَارۡحَمۡ وَاَنۡتَ خَيۡرُ الرّٰحِمِيۡنَ ۝١١٩

११९. तथा तिमी भन, "हे मेरा प्रतिपालक, क्षमा प्रदान गर तथा दया गर, तथा दया गर्नेहरूमध्ये तिमी नै सर्वश्रेष्ठ दयालु रहेका छौ ।"

سُوْرَةُ النُّوْرِ مَدَنِيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ خَمْسٌ وَّسِتُّوْنَ اٰيَةً وَّتِسْعُ رُكُوْعَاتٍ

## अल्-नूर
(हिजरतपछि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

سُوْرَةٌ اَنْزَلْنٰهَا وَفَرَضْنٰهَا وَاَنْزَلْنَا فِيْهَآ اٰيٰتٍۭ بَيِّنٰتٍ لَّعَلَّكُمْ تَذَكَّرُوْنَ ②

२. हामीले अवतीर्ण गरेको (यो) एउटा यस्तो सूरः (हो) जसको (पालना) हामीले अनिवार्य गरेकाछौं, तथा यसमा हामीले स्पष्ट निर्देशनहरू अवतीर्ण गरेका छौं, ताकि तिमीहरू अर्ती ग्रहण गर ।

اَلزَّانِيَةُ وَالزَّانِيْ فَاجْلِدُوْا كُلَّ وَاحِدٍ مِّنْهُمَا مِائَةَ جَلْدَةٍ ۪ وَّلَا تَأْخُذْكُمْ بِهِمَا رَاْفَةٌ فِيْ دِيْنِ اللّٰهِ اِنْ كُنْتُمْ تُؤْمِنُوْنَ بِاللّٰهِ وَالْيَوْمِ الْاٰخِرِ ۚ وَلْيَشْهَدْ عَذَابَهُمَا طَآئِفَةٌ مِّنَ الْمُؤْمِنِيْنَ ③

३. व्यभिचारिणी र व्यभिचारीलाई अर्थात्) तिनीहरूमध्ये प्रत्येकलाई सय कोर्रा लगाऊ । तथा यदि तिमीहरू अल्लाह र अन्तिम दिनप्रति विश्वास राख्छौ भने अल्लाहको विधान (सम्पादन) को सम्बन्धमा तिनीहरूको ममताले तिमीहरूलाई बाधा नपुऱ्याओस् । तथा विश्वासीजनको एउटा जमातले तिनीहरूको· दण्डलाई (प्रत्यक्ष) हेरुन् ।

اَلزَّانِيْ لَا يَنْكِحُ اِلَّا زَانِيَةً اَوْ مُشْرِكَةً ۫ وَّالزَّانِيَةُ لَا يَنْكِحُهَآ اِلَّا زَانٍ اَوْ مُشْرِكٌ ۚ وَحُرِّمَ ذٰلِكَ عَلَى الْمُؤْمِنِيْنَ ④

४. व्यभिचारी व्यक्तिले केवल कुनै व्यभिचारिणी अथवा अनेकाश्वरवादी महिलासित विवाह गर्नेछ, तथा व्यभिचारिणी महिलाले केवल कुनै व्यभिचारी अथवा अनेकाश्वरवादी पुरुषसित विवाह गर्नेछ । त्यो (कार्य) विश्वासीजनहरूका निम्ति भने निषेध रहेको छ ।

وَالَّذِيْنَ يَرْمُوْنَ الْمُحْصَنٰتِ ثُمَّ لَمْ يَاْتُوْا بِاَرْبَعَةِ شُهَدَآءَ فَاجْلِدُوْهُمْ ثَمٰنِيْنَ جَلْدَةً وَّلَا تَقْبَلُوْا لَهُمْ شَهَادَةً اَبَدًا ۚ وَاُولٰٓئِكَ هُمُ الْفٰسِقُوْنَ ⑤

५. तथा जुन व्यक्तिहरूले पवित्र आचरण भएकी महिलामाथि आरोप लगाउँछन् परन्तु चारजना साक्षी उपस्थित गर्दैनन् – तिनीहरूलाई असी कोर्रा लगाऊ, तथा (त्यसपछि) कदापि तिनीहरूको साक्षी स्वीकार नगर, तथा तिनीहरू नै

उल्लंघनकारी व्यक्तिहरू हुन्,

إِلَّا ٱلَّذِينَ تَابُوا۟ مِنۢ بَعْدِ ذَٰلِكَ وَأَصْلَحُوا۟ فَإِنَّ ٱللَّهَ غَفُورٌ رَّحِيمٌ ۝٥

५. ती व्यक्तिहरूबाहेक जसले त्यसपछि प्रायश्चित गर्छन् तथा आफ्नो सुधार गर्छन्, किनभने अल्लाह साँचै नै परम क्षमाशील, परम करुणाशील छन् ।

وَٱلَّذِينَ يَرْمُونَ أَزْوَٰجَهُمْ وَلَمْ يَكُن لَّهُمْ شُهَدَآءُ إِلَّآ أَنفُسُهُمْ فَشَهَٰدَةُ أَحَدِهِمْ أَرْبَعُ شَهَٰدَٰتٍۭ بِٱللَّهِ ۙ إِنَّهُۥ لَمِنَ ٱلصَّٰدِقِينَ ۝٦

६. तथा जुन व्यक्तिहरूले आफ्ना पत्नीहरूमाथि आरोप लगाउँछन्, परन्तु आफूबाहेक कुनै साक्षी प्रस्तुत गर्न सक्दैनन् – यस्ता व्यक्तिहरूमध्ये कसैको साक्षी (तब मानिनेछ) यदि त्यस व्यक्तिले अल्लाहको शपथ खाएर उ निश्चयपूर्वक सत्यवादी व्यक्तिहरूमध्ये रहेको छ भनी चारपटक साक्षी दिनेछ ।

وَٱلْخَٰمِسَةُ أَنَّ لَعْنَتَ ٱللَّهِ عَلَيْهِ إِن كَانَ مِنَ ٱلْكَٰذِبِينَ ۝٧

७. तथा (उसको) पाँचौ (शपथस्वरूप) यदि उ मिथ्यावादी भएमा उसमाथि अल्लाहको अभिशाप परोस् (भनी उसले भन्नुपर्नेछ) ।

وَيَدْرَؤُا۟ عَنْهَا ٱلْعَذَابَ أَن تَشْهَدَ أَرْبَعَ شَهَٰدَٰتٍۭ بِٱللَّهِ ۙ إِنَّهُۥ لَمِنَ ٱلْكَٰذِبِينَ ۝٨

८. परन्तु यदि त्यस (पत्नी)ले अल्लाहको शपथ खाएर त्यो (उसको पति) मिथ्यावादी हो भनी चारपटक साक्षी दिएमा त्यसले उसको दण्ड निवारण गर्नेछ ।

وَٱلْخَٰمِسَةَ أَنَّ غَضَبَ ٱللَّهِ عَلَيْهَآ إِن كَانَ مِنَ ٱلصَّٰدِقِينَ ۝٩

९. तथा (त्यसको) पाँचौं (शपथस्वरूप) यदि त्यो (पति) सत्यवादी भएमा उसमाथि अल्लाहको अभिशाप परोस् (भनी त्यसले भन्नु पर्नेछ) ।

وَلَوْلَا فَضْلُ ٱللَّهِ عَلَيْكُمْ وَرَحْمَتُهُۥ وَأَنَّ ٱللَّهَ تَوَّابٌ حَكِيمٌ ۝١٠

१०. तथा तिमीहरूमाथि अल्लाहको कृपा र उनको दया नरहेको भए (तिमीहरू दुःखमा पर्ने थियौ, परन्तु (वास्तविकता के हो भने) अल्लाह परम कृपादृष्टिकर्ता (र) तत्त्वज्ञ छन्

إِنَّ ٱلَّذِينَ جَآءُو بِٱلْإِفْكِ عُصْبَةٌ مِّنكُمْ ۚ لَا تَحْسَبُوهُ شَرًّا لَّكُم ۖ بَلْ هُوَ

११. वस्तुतः ती व्यक्तिहरू जसले मिथ्या गढेका थिए तिमीहरूमध्येकै एउटा समूह

خَيْرٌ لَّكُمْ ۚ لِكُلِّ امْرِئٍ مِّنْهُمْ مَّا اكْتَسَبَ مِنَ الْاِثْمِ ۚ وَالَّذِيْ تَوَلّٰى كِبْرَهٗ مِنْهُمْ لَهٗ عَذَابٌ عَظِيْمٌ ﴿١٢﴾

हुन् । यस कार्यलाई तिमीहरू स्वयम्का निम्ति नराम्रो भनी नठान, होइन, अपितु यो तिमीहरूका निम्ति उत्तम रहेको छ । तिनीहरूमध्ये हरेकलाई उसले कमाएको पापको (अंश) मिल्नेछ, तथा तिनीहरूमध्ये जसले त्यस पापमा मुख्य भूमिका निभाएको थियो त्यस व्यक्तिलाई कठोर दण्ड मिल्नेछ ।

لَوْلَآ اِذْ سَمِعْتُمُوْهُ ظَنَّ الْمُؤْمِنُوْنَ وَالْمُؤْمِنٰتُ بِاَنْفُسِهِمْ خَيْرًا ۙ وَّقَالُوْا هٰذَآ اِفْكٌ مُّبِيْنٌ ﴿١٣﴾

१३. जब तिमीहरूले त्यो कुरा सुन्यौ, (तब) विश्वासी पुरुषहरू र विश्वासी महिलाहरूले आफ्ना मानिसहरूका सम्बन्धमा किन शुभ चिताएनन् र "यो त एउटा स्पष्ट मिथ्यारोप हो" भनी किन भनेनन्?

لَوْلَا جَآءُوْ عَلَيْهِ بِاَرْبَعَةِ شُهَدَآءَ ۚ فَاِذْ لَمْ يَاْتُوْا بِالشُّهَدَآءِ فَاُولٰٓئِكَ عِنْدَ اللّٰهِ هُمُ الْكٰذِبُوْنَ ﴿١٤﴾

१४. तिनीहरूले त्यस कुरालाई (साबित) गर्नका निम्ति चारजना साक्षीहरू किन प्रस्तुत गरेनन् त? अतः तिनीहरूले (आवश्यक) साक्षी प्रस्तुत गर्न नसकेका हुनाले अल्लाहका दृष्टिमा तिनीहरू नै मिथ्यावादी रहेका छन् ।

وَلَوْلَا فَضْلُ اللّٰهِ عَلَيْكُمْ وَرَحْمَتُهٗ فِي الدُّنْيَا وَالْاٰخِرَةِ لَمَسَّكُمْ فِيْ مَآ اَفَضْتُمْ فِيْهِ عَذَابٌ عَظِيْمٌ ﴿١٥﴾

१५. यदि तिमीहरूमाथि यस संसारमा र परलोकमा अल्लाहको कृपा र उनको करुणा नरहेको भए जुन (कलङ्क)मा तिमीहरू डुबेका थियौ त्यसका कारण तिमीहरूमाथि एउटा ठूलो दण्ड बर्सने थियो ।

اِذْ تَلَقَّوْنَهٗ بِاَلْسِنَتِكُمْ وَتَقُوْلُوْنَ بِاَفْوَاهِكُمْ مَّا لَيْسَ لَكُمْ بِهٖ عِلْمٌ وَّتَحْسَبُوْنَهٗ هَيِّنًا ۖ وَّهُوَ عِنْدَ اللّٰهِ عَظِيْمٌ ﴿١٦﴾

१६. जब तिमीहरूले त्यस कुरालाई सुन्यौ त्यसलाई आफ्नो जिब्राले फैलायौ तथा आफ्ना मुखले (त्यो) कुरा गर्न लाग्यौ जसबारे तिमीहरूलाई वास्तविक ज्ञान थिएन, तथा त्यसलाई तिमीहरूले साधारण कुरा ठान्यौ, अपितु अल्लाहको दृष्टिमा भने त्यो एउटा भयानक (कुरो) थियो ।

وَلَوْلَآ اِذْ سَمِعْتُمُوْهُ قُلْتُمْ مَّا يَكُوْنُ لَنَآ

१७. जब तिमीहरूले त्यो कुरा सुन्यौ तिमीहरूले यसो किन भनेनौ, (अर्थात्)

اَنْ نَّتَكَلَّمَ بِهٰذَا ۖ سُبْحٰنَكَ هٰذَا بُهْتَانٌ عَظِيْمٌ ⑯

"यसको चर्चा गर्नु हाम्रा निम्ति उचित कुरो होइन । (हे अल्लाह), तिमी पवित्र छौ, यो त एउटा ठूलो मिथ्यारोप हो ।"

يَعِظُكُمُ اللّٰهُ اَنْ تَعُوْدُوْا لِمِثْلِهٖٓ اَبَدًا اِنْ كُنْتُمْ مُّؤْمِنِيْنَ ⑰

१८. यदि तिमीहरू विश्वासी हौ भने त्यस्ता कुरा कदापिन दोहोऱ्याउन अल्लाह तिमीहरूलाई उपदेश दिन्छन् ।

وَ يُبَيِّنُ اللّٰهُ لَكُمُ الْاٰيٰتِ ؕ وَ اللّٰهُ عَلِيْمٌ حَكِيْمٌ ⑱

१९. तथा अल्लाहले तिमीहरूका निम्ति निर्देशनहरूको वर्णन गर्छन्, तथा अल्लाह सर्वज्ञ, तत्त्वज्ञ छन् ।

اِنَّ الَّذِيْنَ يُحِبُّوْنَ اَنْ تَشِيْعَ الْفَاحِشَةُ فِى الَّذِيْنَ اٰمَنُوْا لَهُمْ عَذَابٌ اَلِيْمٌ ۙ فِى الدُّنْيَا وَ الْاٰخِرَةِ ؕ وَ اللّٰهُ يَعْلَمُ وَ اَنْتُمْ لَا تَعْلَمُوْنَ ⑲

२०. निश्चय नै जुन व्यक्तिहरू विश्वासीजनमा अनैतिक कुराहरूको प्रचार होओस् भन्ने इच्छा गर्छन्, तिनीहरूलाई यस संसारमा र परलोकमा यातनादायक दण्ड मिल्नेछ । अल्लाह जान्दछन् तर तिमीहरू जान्दैनौ ।

وَلَوْ لَا فَضْلُ اللّٰهِ عَلَيْكُمْ وَ رَحْمَتُهٗ وَ اَنَّ اللّٰهَ رَءُوْفٌ رَّحِيْمٌ ⑳

२१. तथा तिमीहरूमाथि अल्लाहको कृपा र उनको करुणा नरहेको भए ता (तिमीहरूको सर्वनाश हुने थियो), परन्तु (वास्तवविकता के हो भने) अल्लाह परम कृपादृष्टिकर्ता (तथा) परम करुणाशील छन् ।

يٰۤاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا لَا تَتَّبِعُوْا خُطُوٰتِ الشَّيْطٰنِ ؕ وَ مَنْ يَّتَّبِعْ خُطُوٰتِ الشَّيْطٰنِ فَاِنَّهٗ يَاْمُرُ بِالْفَحْشَآءِ وَ الْمُنْكَرِ ؕ وَلَوْ لَا فَضْلُ اللّٰهِ عَلَيْكُمْ وَ رَحْمَتُهٗ مَا زَكٰى مِنْكُمْ مِّنْ اَحَدٍ اَبَدًا ۙ وَّ لٰكِنَّ اللّٰهَ يُزَكِّيْ مَنْ يَّشَآءُ ؕ وَ اللّٰهُ سَمِيْعٌ عَلِيْمٌ ㉑

२२. हे विश्वासीजन हो ! सैतानको पाइला नपहिल्याइ, जसले सैतानको पाइला पैलाउँछ, सैतानले केवल अनैतिक र स्पष्ट अश्लील कुराहरूको आदेश दिन्छ (भनी त्यसले जानोस्) । तथा अल्लाहको कृपा र उनको करुणा तिमीहरूमाथि नरहेको भए तिमीहरूमध्ये कोही पनि कदापि पवित्र हुनसक्ने थिएन, परन्तु अल्लाहले जसलाई चाहन्छन् उसलाई पवित्र तुल्याउँछन् । तथा अल्लाह सर्वश्रोता, सर्वज्ञ छन् ।

وَلَا يَاْتَلِ اُولُوا الْفَضْلِ مِنْكُمْ وَ السَّعَةِ اَنْ يُّؤْتُوْٓا اُولِى الْقُرْبٰى وَ الْمَسٰكِيْنَ وَ

२३. तथा तिमीहरूमध्ये धनसम्पन्न र सामर्थ्यवान् व्यक्तिहरूले आफ्ना नातेदार र

الْمُهٰجِرِيْنَ فِيْ سَبِيْلِ اللّٰهِ ۖ وَلْيَعْفُوْا وَلْيَصْفَحُوْا ۗ اَلَا تُحِبُّوْنَ اَنْ يَّغْفِرَ اللّٰهُ لَكُمْ ۗ وَاللّٰهُ غَفُوْرٌ رَّحِيْمٌ ﴿٢٣﴾

अभावग्रस्त तथा अल्लाहका निम्ति आफ्ना घरबार त्याग्ने व्यक्तिहरूलाई (केही) दिने छैनन् भनी शपथ नखाउन् । तिनीहरूले क्षमादान गर्ने र (भूल-त्रुटिप्रति) सहन गर्ने गरून् । अल्लाहले तिमीहरूलाई क्षमा प्रदान गरून् भन्ने तिमीहरूको चाहना छैन र ? तथा अल्लाह परम क्षमाशील, परम करुणाशील छन् ।

اِنَّ الَّذِيْنَ يَرْمُوْنَ الْمُحْصَنٰتِ الْغٰفِلٰتِ الْمُؤْمِنٰتِ لُعِنُوْا فِي الدُّنْيَا وَالْاٰخِرَةِ ۖ وَلَهُمْ عَذَابٌ عَظِيْمٌ ﴿٢٤﴾

२४. वस्तुत: ती व्यक्तिहरू जसले पवित्र आचरण भएकी, बेखबर विश्वासी महिलामाथि आरोप लगाउँछन् तिनीहरू यस संसारमा र परलोकमा पनि अभिशापित हुन्छन् । तथा तिनीहरूलाई एउटा ठूलो दण्ड मिल्नेछ,

يَّوْمَ تَشْهَدُ عَلَيْهِمْ اَلْسِنَتُهُمْ وَاَيْدِيْهِمْ وَاَرْجُلُهُمْ بِمَا كَانُوْا يَعْمَلُوْنَ ﴿٢٥﴾

२५. त्यसदिन तिनीहरूले गर्ने गरेका कार्यहरूबारे तिनीहरूको जिब्रो र तिनीहरूका हात तथा खुट्टाहरूले तिनीहरूविरुद्ध साक्षी दिनेछन् ।

يَوْمَئِذٍ يُّوَفِّيْهِمُ اللّٰهُ دِيْنَهُمُ الْحَقَّ وَيَعْلَمُوْنَ اَنَّ اللّٰهَ هُوَ الْحَقُّ الْمُبِيْنُ ﴿٢٦﴾

२६. त्यसैदिन अल्लाहले तिनीहरूलाई तिनीहरूको उचित देय प्रदान गर्नेछन्, तथा अल्लाह नै एकमात्र प्रकृत सत्य हुन् भनी तिनीहरूले जान्नेछन् ।

اَلْخَبِيْثٰتُ لِلْخَبِيْثِيْنَ وَالْخَبِيْثُوْنَ لِلْخَبِيْثٰتِ ۚ وَالطَّيِّبٰتُ لِلطَّيِّبِيْنَ وَالطَّيِّبُوْنَ لِلطَّيِّبٰتِ ۚ اُولٰٓئِكَ مُبَرَّءُوْنَ مِمَّا يَقُوْلُوْنَ ۗ لَهُمْ مَّغْفِرَةٌ وَّرِزْقٌ كَرِيْمٌ ﴿٢٧﴾

२७. अपवित्र वस्तुहरू अपवित्र मानिसहरूका निम्ति रहेका छन्, तथा अपवित्र मानिसहरू अपवित्र वस्तुहरूका निम्ति रहेका छन् । तथा पवित्र वस्तुहरू पवित्र मानिसहरूका निम्ति रहेका छन् तथा पवित्र मानिसहरू पवित्र वस्तुहरूका निम्ति रहेका छन्; यी व्यक्तिहरू तिनीहरूका (मिथ्यारोपीहरूका) सम्पूर्ण आरोपहरूबाट पवित्र छन् । तिनीहरूलाई क्षमादान र सम्माननीय जीविका प्राप्त हुनेछ ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا لَا تَدْخُلُوا بُيُوتًا غَيْرَ بُيُوتِكُمْ حَتَّىٰ تَسْتَأْنِسُوا وَتُسَلِّمُوا عَلَىٰ أَهْلِهَا ۚ ذَٰلِكُمْ خَيْرٌ لَّكُمْ لَعَلَّكُمْ تَذَكَّرُونَ ﴿٢٨﴾

२८. हे विश्वासीजन हो ! आफ्नो (घर) बाहेक अन्य घरहरूमा अनुमतिविना तथा त्यहाँ निवास गर्ने व्यक्तिहरूलाई सलाम (अभिवादन) नगरिकन दाखिल नहोऊ । यो तिमीहरूका निम्ति उत्तम रहेको छ, ताकि तिमीहरू अर्ती लिन सक ।

فَإِن لَّمْ تَجِدُوا فِيهَا أَحَدًا فَلَا تَدْخُلُوهَا حَتَّىٰ يُؤْذَنَ لَكُمْ ۖ وَإِن قِيلَ لَكُمُ ارْجِعُوا فَارْجِعُوا ۖ هُوَ أَزْكَىٰ لَكُمْ ۚ وَاللَّهُ بِمَا تَعْمَلُونَ عَلِيمٌ ﴿٢٩﴾

२९. तथा त्यहाँ तिमीहरूले कसैलाई उपस्थित पाएनौ भने, तिमीहरूलाई अनुमति नदिउन्जेलसम्म त्यहाँ दाखिल नहोऊ । तथा यदि तिमीहरूलाई "फर्किएर जाऊ" भनी भनिएमा, तिमीहरू फर्किएर जाऊ, त्यो कार्य तिमीहरूका निम्ति अधिक पवित्र हुनेछ । तथा जुन कार्य तिमीहरू गर्छौ त्यसलाई अल्लाहले राम्ररी जान्दछन् ।

لَّيْسَ عَلَيْكُمْ جُنَاحٌ أَن تَدْخُلُوا بُيُوتًا غَيْرَ مَسْكُونَةٍ فِيهَا مَتَاعٌ لَّكُمْ ۚ وَاللَّهُ يَعْلَمُ مَا تُبْدُونَ وَمَا تَكْتُمُونَ ﴿٣٠﴾

३०. यस्तो निवासीविहीन घर जसमा तिमीहरूका वस्तुहरू रहेका छन्, दाखिल भएमा तिमीहरूलाई कुनै पाप लाग्ने छैन । तथा जुनकुरा तिमीहरू प्रकट गर्छौ र जुनकुरा लुकाउँछौ अल्लाहले (सबै) जान्दछन्

قُل لِّلْمُؤْمِنِينَ يَغُضُّوا مِنْ أَبْصَارِهِمْ وَيَحْفَظُوا فُرُوجَهُمْ ۚ ذَٰلِكَ أَزْكَىٰ لَهُمْ ۗ إِنَّ اللَّهَ خَبِيرٌ بِمَا يَصْنَعُونَ ﴿٣١﴾

३१. विश्वासीजनलाई तिनीहरूले आफ्ना नेत्रहरूलाई नियन्त्रित राखून् तथा आफ्ना गुप्ताङ्गहरूको सुरक्षा गरून् भनी तिमी भनिदेउ, त्यो कार्य तिनीहरूका निम्ति अधिक पवित्रतास्वरूप रहेको छ । तिनीहरूका कार्यहरूप्रति अल्लाह निश्चय नै पूर्ण विदित छन् ।

وَقُل لِّلْمُؤْمِنَاتِ يَغْضُضْنَ مِنْ أَبْصَارِهِنَّ وَيَحْفَظْنَ فُرُوجَهُنَّ وَلَا يُبْدِينَ زِينَتَهُنَّ إِلَّا مَا ظَهَرَ مِنْهَا ۖ وَلْيَضْرِبْنَ بِخُمُرِهِنَّ عَلَىٰ جُيُوبِهِنَّ ۖ وَلَا يُبْدِينَ زِينَتَهُنَّ إِلَّا لِبُعُولَتِهِنَّ أَوْ آبَائِهِنَّ أَوْ آبَاءِ بُعُولَتِهِنَّ أَوْ أَبْنَائِهِنَّ أَوْ أَبْنَاءِ بُعُولَتِهِنَّ أَوْ

३२. तथा विश्वासी महिलाहरूलाई तिमी के भनिदेउ भने, तिनीहरूले आफ्ना नेत्रहरूलाई नियन्त्रित राखून् तथा आफ्ना गुप्ताङ्गहरूको सुरक्षा गरून्, तथा स्वयम् प्रकट हुन (अङ्गहरू)बाहेक आफ्नो सौन्दर्य (र गरगहनाहरू) प्रदर्शन नगरून्, तथा आफ्नो टाउकाको ओढ्नेद्वारा आफ्नो छातीलाई ढाकेर राखून्, तथा आफ्ना पति, आफ्ना

إِخْوَانِهِنَّ أَوْ بَنِيٓ إِخْوَانِهِنَّ أَوْ بَنِيٓ أَخَوَاتِهِنَّ أَوْ نِسَآئِهِنَّ أَوْ مَا مَلَكَتْ أَيْمَانُهُنَّ أَوِ التَّابِعِينَ غَيْرِ أُولِي الْإِرْبَةِ مِنَ الرِّجَالِ أَوِ الطِّفْلِ الَّذِينَ لَمْ يَظْهَرُوا عَلَىٰ عَوْرَاتِ النِّسَآءِ ۖ وَلَا يَضْرِبْنَ بِأَرْجُلِهِنَّ لِيُعْلَمَ مَا يُخْفِينَ مِن زِينَتِهِنَّ ۚ وَتُوبُوٓا إِلَى اللَّهِ جَمِيعًا أَيُّهَ الْمُؤْمِنُونَ لَعَلَّكُمْ تُفْلِحُونَ ﴿٣١﴾

पिता अथवा आफ्ना ससुरा वा आफ्ना पुत्रहरू, आफ्ना पतिका पुत्रहरू अथवा आफ्ना भाइहरू वा आफ्ना भाइका पुत्रहरू अथवा आफ्ना बहिनीका पुत्रहरू वा आफ्ना (नातेदार) महिलाहरू अथवा आफ्ना दाहिने हातअन्तर्गत रहने भृत्यहरू अथवा आफ्ना अन्तर्गत रहने यस्ता व्यक्तिहरू जो कु-भावनारहित छन् अथवा यस्ता बालकहरू जसमा महिलाहरूका गुप्ताङ्गहरूबारे हालसम्म कुनै धारणा जागेको छैन, यिनीहरूबाहेक (अन्य कसैका सामुन्ने) तिनीहरूले आफ्नो सौन्दर्य र गरगहना प्रदर्शन नगरून् । तथा आफूले गुप्त राख्नु पर्ने सौन्दर्य उदाङ्गो पार्ने ढङ्गले तिनीहरू हिँड्ने नगरून् । तथा हे विश्वासीजन हो, तिमीहरू सबै अल्लाहतर्फ फर्क ताकि तिमीहरू कृतार्थ होऊ ।

وَأَنكِحُوا الْأَيَامَىٰ مِنكُمْ وَالصَّالِحِينَ مِنْ عِبَادِكُمْ وَإِمَآئِكُمْ ۚ إِن يَكُونُوا فُقَرَآءَ يُغْنِهِمُ اللَّهُ مِن فَضْلِهِ ۗ وَاللَّهُ وَاسِعٌ عَلِيمٌ ﴿٣٢﴾

३२. तथा तिमीहरूबीच रहेका विधवा महिलाहरू तथा आफ्ना पुरुष भृत्यहरू र महिला भृत्याहरूमध्ये (विवाहका) योग्य रहेका (सबैको) विवाहसम्पन्न गराऊ । यदि तिनीहरू गरीब रहेमा अल्लाहले आफ्नो कृपाद्वारा तिनीहरूलाई धनसम्पन्न तुल्याउने छन्, तथा अल्लाह परम दानशील, सर्वज्ञ छन् ।

وَلْيَسْتَعْفِفِ الَّذِينَ لَا يَجِدُونَ نِكَاحًا حَتَّىٰ يُغْنِيَهُمُ اللَّهُ مِن فَضْلِهِ ۗ وَالَّذِينَ يَبْتَغُونَ الْكِتَابَ مِمَّا مَلَكَتْ أَيْمَانُكُمْ فَكَاتِبُوهُمْ إِنْ عَلِمْتُمْ فِيهِمْ خَيْرًا ۖ وَآتُوهُم مِّن مَّالِ اللَّهِ الَّذِيٓ آتَاكُمْ ۚ وَلَا تُكْرِهُوا فَتَيَاتِكُمْ عَلَى الْبِغَآءِ إِنْ أَرَدْنَ تَحَصُّنًا لِّتَبْتَغُوا عَرَضَ الْحَيَوٰةِ الدُّنْيَا ۚ وَمَن يُكْرِههُّنَّ فَإِنَّ اللَّهَ مِنۢ

३४. तथा जुन व्यक्तिहरूको विवाह गर्ने (सामर्थ्य) छैन, जबसम्म अल्लाहले तिनीहरूलाई आफ्नो कृपाद्वारा धनसम्पन्न तुल्याउँदैनन् (तबसम्म) तिनीहरूले स्वयम्लाई पवित्र राखून् । तथा तिमीहरूका भृत्यहरूमध्ये जसले लिखितरूपमा दास्यमुक्तको सम्झौता गर्न चाहन्छन् यदि तिमीहरूले तिनीहरूमा कुनै (अव्यक्त) उत्तम गुण देखेमा तिनीहरूका निम्ति त्यो (सम्झौतापत्र) लेखिदेऊ । तथा अल्लाहले

بَعْدِ اِكْرَاهِهِنَّ غَفُوْرٌ رَّحِيْمٌ ﴿۳۴﴾

तिमीहरूलाई प्रदान गरेको त्यो सम्पत्तिबाट जुन (वास्तवमा) उनकै रहेको छ तिनीहरूलाई प्रदान गर । तथा सांसारिक सुख सम्भोग प्राप्तिका निम्ति तिमीहरू आफ्ना दासीहरूलाई (अविवाहित राखी) तिनीहरूको पवित्र रहने चाहना विपरित तिनीहरूलाई अपवित्र जीवन बिताउन बाध्य नगर । परन्तु यदि कसैले तिनीहरूलाई विवश तुल्याएमा तिनीहरूको विवशतापछि अल्लाह (तिनीहरूप्रति) परम क्षमाशील (तथा) परम करुणाशील रहनेछन् ।

وَلَقَدْ اَنْزَلْنَآ اِلَيْكُمْ اٰيٰتٍ مُّبَيِّنٰتٍ وَّمَثَلًا مِّنَ الَّذِيْنَ خَلَوْا مِنْ قَبْلِكُمْ وَمَوْعِظَةً لِّلْمُتَّقِيْنَ ﴿۳۵﴾

३५. तथा हामीले तिमीहरूप्रति स्पष्ट चिह्नहरू, तथा तिमीहरूभन्दा पहिला बितिसकेका व्यक्तिहरूको उदाहरण, तथा अल्लाहसित डराउने व्यक्तिहरूका निम्ति उपदेश अवतीर्ण गरेका छौं ।

اَللّٰهُ نُوْرُ السَّمٰوٰتِ وَالْاَرْضِ ۚ مَثَلُ نُوْرِهٖ كَمِشْكٰوةٍ فِيْهَا مِصْبَاحٌ ۚ اَلْمِصْبَاحُ فِيْ زُجَاجَةٍ ۚ اَلزُّجَاجَةُ كَاَنَّهَا كَوْكَبٌ دُرِّيٌّ يُّوْقَدُ مِنْ شَجَرَةٍ مُّبٰرَكَةٍ زَيْتُوْنَةٍ لَّا شَرْقِيَّةٍ وَّلَا غَرْبِيَّةٍ ۙ يَّكَادُ زَيْتُهَا يُضِيْٓءُ وَلَوْ لَمْ تَمْسَسْهُ نَارٌ ۚ نُوْرٌ عَلٰى نُوْرٍ ۚ يَهْدِى اللّٰهُ لِنُوْرِهٖ مَنْ يَّشَآءُ ۚ وَيَضْرِبُ اللّٰهُ الْاَمْثَالَ لِلنَّاسِ ۚ وَاللّٰهُ بِكُلِّ شَيْءٍ عَلِيْمٌ ﴿۳۶﴾

३६. आकाशमण्डल तथा पृथ्वीका ज्योति अल्लाह नै हुन् । उनको ज्योतिको उपमा एउटा यस्तो (सौन्दर्यपूर्ण) खोपोसदृश रहेको छ, जसमा एउटा दीप हुन्छ । त्यो दीप एउटा सीसाभित्र हुन्छ । त्यो सिसा मानौं एउटा चम्किलो तारो -नक्षत्र) सदृश हुन्छ जसलाई एउटा यस्तो पवित्र वृक्ष अर्थात् जैतुनको तेलबाट बालिन्छ, जुन वृक्ष न पूर्वीय रहेको छ न त पाश्चात्य नै, त्यसको तेल सम्भवत: अग्निको स्पर्शविना नै प्रज्वलित हुन सक्छ । ज्योतिमाथि ज्योति ! अल्लाहले जसलाई चाहन्छन् उसलाई आफ्नो ज्योतितर्फ मार्ग प्रदर्शन गर्छन् । तथा मानिसहरूका निम्ति अल्लाह दृष्टान्त वर्णन गर्छन् तथा सम्पूर्ण वस्तुहरूलाई अल्लाहले राम्ररी जान्दछन् ।

فِيْ بُيُوْتٍ اَذِنَ اللّٰهُ اَنْ تُرْفَعَ وَيُذْكَرَ فِيْهَا اسْمُهٗ ۙ يُسَبِّحُ لَهٗ فِيْهَا بِالْغُدُوِّ وَالْاٰصَالِ ﴿۳۷﴾

३७. त्यो ज्योति यस्ता घरहरूमा प्रज्वलित छ जुन (घरहरूलाई) अल्लाहले उच्चता प्रदान गर्ने घोषणा गरेका छन् तथा त्यहाँ

अल्लाहको नाम स्मरण गरिन्छ । त्यहाँ बिहानी र बेलुकी उनको गुणगान गर्छन् ।

رِجَالٌ لَّا تُلْهِيهِمْ تِجَارَةٌ وَلَا بَيْعٌ عَن ذِكْرِ اللَّهِ وَإِقَامِ الصَّلَاةِ وَإِيتَاءِ الزَّكَاةِ ۙ يَخَافُونَ يَوْمًا تَتَقَلَّبُ فِيهِ الْقُلُوبُ وَالْأَبْصَارُ ﴿٣٧﴾

३८. यस्ता मानिसहरू जसलाई अल्लाहको स्मरण गर्नबाट र नमाज अनुष्ठान गर्नबाट तथा जगात दिनबाट न व्यापारले न त किनबेचले नै भुल्याउँछ । तिनीहरू त्यसदिनप्रति डराउँछन् जुनदिन आत्मा र नेत्रहरू विक्षुब्ध हुनेछन्,

لِيَجْزِيَهُمُ اللَّهُ أَحْسَنَ مَا عَمِلُوا وَيَزِيدَهُم مِّن فَضْلِهِ ۗ وَاللَّهُ يَرْزُقُ مَن يَشَاءُ بِغَيْرِ حِسَابٍ ﴿٣٨﴾

३९. ताकि अल्लाहले तिनीहरूलाई तिनका कार्यहरूको सर्वोत्तम प्रतिदान प्रदान गरून्, तथा आफ्नो कृपाद्वारा तिनीहरूलाई अधिक बढाएर प्रदान गरून् । तथा अल्लाहले जसलाई चाहन्छन् बेहिसाब जीविका प्रदान गर्छन् ।

وَالَّذِينَ كَفَرُوا أَعْمَالُهُمْ كَسَرَابٍ بِقِيعَةٍ يَحْسَبُهُ الظَّمْآنُ مَاءً حَتَّىٰ إِذَا جَاءَهُ لَمْ يَجِدْهُ شَيْئًا وَوَجَدَ اللَّهَ عِندَهُ فَوَفَّاهُ حِسَابَهُ ۗ وَاللَّهُ سَرِيعُ الْحِسَابِ ﴿٣٩﴾

४०. तथा अविश्वासी व्यक्तिहरूका कार्यहरू भने मरुभूमिको मृगमरीचिका सदृश रहेका छन् । त्यसलाई एउटा प्यासो व्यक्तिले पानी ठान्छ र जब त्यो व्यक्ति त्यसतर्फ बढ्छ, त्यहाँ त्यसले केही पाउँदैन । तथा उसले त्यहाँ अल्लाहलाई उपस्थित पाउँछ, जसले उसलाई उसको हिसाब चुक्ता गरिदिन्छन्, तथा हिसाब दिनमा अल्लाह अति तीव्र रहेका छन् ।

أَوْ كَظُلُمَاتٍ فِي بَحْرٍ لُّجِّيٍّ يَغْشَاهُ مَوْجٌ مِّن فَوْقِهِ مَوْجٌ مِّن فَوْقِهِ سَحَابٌ ۚ ظُلُمَاتٌ بَعْضُهَا فَوْقَ بَعْضٍ إِذَا أَخْرَجَ يَدَهُ لَمْ يَكَدْ يَرَاهَا ۗ وَمَن لَّمْ يَجْعَلِ اللَّهُ لَهُ نُورًا فَمَا لَهُ مِن نُّورٍ ﴿٤٠﴾

४१. अथवा -तिनीहरूका कार्यहरू) विस्तृत र गहिरो समुद्रमा रहेको त्यस घोर अन्धकारसदृश रहेका छन्, जसमा लहर चढिरहेको हुन्छ, जसमाथि अर्को लहर हुन्छ र त्यसमाथि बादल छाएको हुन्छ, एकमाथि अर्को खातस्वरूप रहेको अन्धकार । जब उसले आफ्नो हात अघि बढाउँछ, त्यसलाई (समेत) उसले देख्न सक्दैन, तथा जसलाई अल्लाहले ज्योति प्रदान गर्दैनन् – त्यसका निम्ति -कहींबाट) ज्योति प्राप्त गर्न सम्भव

छैन ।

४२. अल्लाह उनै हुन् जसको गुणगान आकाशमण्डल र पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरूले तथा पंक्षीहरूले (पनि) आफ्ना पंख फैलाएर पंक्तिबद्ध भई गर्ने गर्छन् भन्ने कुरा तिमीलाई थाहा छैन र? हरेकले आफ्नो प्रार्थना गर्ने र गुणगान गर्ने (विधि) जान्दछ । तथा तिनीहरूले जुन कार्य गर्छन् अल्लाहले त्यसलाई राम्ररी जान्दछन् ।

أَلَمْ تَرَ أَنَّ اللّٰهَ يُسَبِّحُ لَهُ مَنْ فِي السَّمٰوٰتِ وَالْأَرْضِ وَالطَّيْرُ صٰٓفّٰتٍ ۚ كُلٌّ قَدْ عَلِمَ صَلَاتَهُ وَتَسْبِيحَهُ ۗ وَاللّٰهُ عَلِيمٌ بِمَا يَفْعَلُونَ ﴿٤٢﴾

४३. तथा आकाशमण्डल र पृथ्वीको राज्य एकमात्र अल्लाहकै रहेको छ, तथा अल्लाहतर्फै फर्केर जानु पर्नेछ ।

وَلِلّٰهِ مُلْكُ السَّمٰوٰتِ وَالْأَرْضِ ۖ وَإِلَى اللّٰهِ الْمَصِيرُ ﴿٤٣﴾

४४. अल्लाहले बादललाई सन्चालन गर्छन्, त्यसपछि तिनीहरूलाई परस्पर जोड्छन् पुनः तिनीहरूलाई तहतह पारेर राख्छन् फलस्वरूप तिनीहरूका बीचबाट तिमीले पानी बर्सिएको देख्छौ भन्ने कुरा तिमीलाई थाहा छैन र? तथा आकाशबाट उनी पहाड जस्ता बादलहरू) अवतीर्ण गर्छन् जसमा असिना हुन्छ, तथा उनले त्यसद्वारा जसलाई चाहन्छन् प्रहार गर्छन् तथा जसबाट चाहन्छन् त्यसलाई हटाएर लैजान्छन् । त्यसको बिजुलीको चमकले सम्भवतः आँखाको दृष्टि नै हरण गर्न सक्छ ।

أَلَمْ تَرَ أَنَّ اللّٰهَ يُزْجِي سَحَابًا ثُمَّ يُؤَلِّفُ بَيْنَهُ ثُمَّ يَجْعَلُهُ رُكَامًا فَتَرَى الْوَدْقَ يَخْرُجُ مِنْ خِلٰلِهِ ۖ وَيُنَزِّلُ مِنَ السَّمَاءِ مِنْ جِبَالٍ فِيهَا مِنْ بَرَدٍ فَيُصِيبُ بِهِ مَنْ يَشَاءُ وَيَصْرِفُهُ عَنْ مَنْ يَشَاءُ ۖ يَكَادُ سَنَا بَرْقِهِ يَذْهَبُ بِالْأَبْصَارِ ﴿٤٤﴾

४५. रात्रि र दिनलाई अल्लाहले परिवर्तन गरिरहन्छन् । नेत्रवान् व्यक्तिहरूका निम्ति यसमा निश्चय नै एउटा शिक्षा रहेको छ ।

يُقَلِّبُ اللّٰهُ الَّيْلَ وَالنَّهَارَ ۚ إِنَّ فِي ذٰلِكَ لَعِبْرَةً لِأُولِي الْأَبْصَارِ ﴿٤٥﴾

४६. तथा हरेक जन्तुलाई अल्लाहले पानीबाट सृष्टि गरेका हुन् । तिनीहरूमध्ये केही) आफ्नो पेटले घिस्रन्छन् (अघि बढ्छन्), तथा अन्य (केही) चाहिँ आफ्ना दुई खुट्टाले हिँड्छन्, तथा तिनीहरूमध्ये अन्य केही भने) आफ्ना चार पाउले हिँड्छन् ।

وَاللّٰهُ خَلَقَ كُلَّ دَابَّةٍ مِنْ مَاءٍ ۖ فَمِنْهُمْ مَنْ يَمْشِي عَلٰى بَطْنِهِ ۖ وَمِنْهُمْ مَنْ يَمْشِي عَلٰى رِجْلَيْنِ ۖ وَمِنْهُمْ مَنْ

يَّمْشِيْ عَلٰٓى اَرْبَعٍ ؕ يَخْلُقُ اللّٰهُ مَا يَشَآءُ ؕ اِنَّ اللّٰهَ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ﴿۴۵﴾

अल्लाहले जे इच्छा गर्छन् त्यही सृष्टि गर्छन् । निश्चय नै अल्लाहले जे इच्छा गर्छन् त्यो कार्य गर्न उनी सामर्थ्यवान छन् ।

لَقَدْ اَنْزَلْنَآ اٰيٰتٍ مُّبَيِّنٰتٍ ؕ وَاللّٰهُ يَهْدِيْ مَنْ يَّشَآءُ اِلٰى صِرَاطٍ مُّسْتَقِيْمٍ ﴿۴۶﴾

४७. हामीले वास्तवमा स्पष्ट चिह्नहरू अवतीर्ण गरेका छौं । तथा अल्लाहले जसलाई चाहन्छन् त्यसलाई सत्मार्ग प्रदर्शन गर्छन् ।

وَيَقُوْلُوْنَ اٰمَنَّا بِاللّٰهِ وَبِالرَّسُوْلِ وَاَطَعْنَا ثُمَّ يَتَوَلّٰى فَرِيْقٌ مِّنْهُمْ مِّنْۢ بَعْدِ ذٰلِكَ ؕ وَمَآ اُولٰٓئِكَ بِالْمُؤْمِنِيْنَ ﴿۴۷﴾

४८. तथा तिनीहरू भन्छन् "हामी अल्लाहप्रति र सन्देशवाहकप्रति विश्वास गर्छौं, तथा हामी आज्ञापालन गर्छौं", अतः त्यसपश्चात तिनीहरूमध्ये केही व्यक्तिहरू विमुख हुन्छन् । परन्तु त्यस्ता व्यक्तिहरू कदापि विश्वासी हुन सक्दैनन् ।

وَاِذَا دُعُوْٓا اِلَى اللّٰهِ وَرَسُوْلِهٖ لِيَحْكُمَ بَيْنَهُمْ اِذَا فَرِيْقٌ مِّنْهُمْ مُّعْرِضُوْنَ ﴿۴۸﴾

४९. तथा जब तिनीहरूलाई अल्लाह तथा उनका सन्देशवाहकतर्फ उनले तिनीहरूका बीच निर्णय गरून् भनी बोलाइन्छ, तब हेर ! तिनीहरूमध्ये एउटा समूह विमुख हुन पुग्छ ।

وَاِنْ يَّكُنْ لَّهُمُ الْحَقُّ يَاْتُوْٓا اِلَيْهِ مُذْعِنِيْنَ ﴿۴۹﴾

५०. तथा यदि (तिनीहरूले) आफ्नो पक्षमा हक हित (देखेमा) उनीतर्फ पूर्ण आज्ञाकारिताका साथ दगुर्दै आउँछन् ।

اَفِيْ قُلُوْبِهِمْ مَّرَضٌ اَمِ ارْتَابُوْٓا اَمْ يَخَافُوْنَ اَنْ يَّحِيْفَ اللّٰهُ عَلَيْهِمْ وَرَسُوْلُهٗ ؕ بَلْ اُولٰٓئِكَ هُمُ الظّٰلِمُوْنَ ﴿۵۰﴾

५१. के तिनीहरूको हृदयमा कुनै रोग छ? अथवा के तिनीहरू सन्देह गर्छन्, अथवा अल्लाह तथा उनका सन्देशवाहकले तिनीहरूप्रति अत्याचार गर्लान्, भनी तिनीहर डराउँछन्? होइन, (अपितु) तिनीहरू स्वयम् नै अत्याचारी व्यक्तिहरू रहेका छन् ।

اِنَّمَا كَانَ قَوْلَ الْمُؤْمِنِيْنَ اِذَا دُعُوْٓا اِلَى اللّٰهِ وَرَسُوْلِهٖ لِيَحْكُمَ بَيْنَهُمْ اَنْ يَّقُوْلُوْا سَمِعْنَا وَاَطَعْنَا ؕ وَاُولٰٓئِكَ هُمُ الْمُفْلِحُوْنَ ﴿۵۱﴾

५२. विश्वासीजनलाई जब अल्लाह र उनका सन्देशवाहकतर्फ, तिनीहरूका बीचमा उनले निर्णय गरून् भनी बोलाइन्छ, तब तिनीहरूले त्यसको उत्तरमा केवल के भन्छन् भने, "हामीले हुन्यौं तथा हामी

आज्ञाकारी भयौं ।" तथा यिनीहरू नै ती व्यक्तिहरू हुन् जो कृतार्थ हुनेछन् ।

وَمَنْ يُّطِعِ اللّٰهَ وَرَسُوْلَهٗ وَيَخْشَ اللّٰهَ وَيَتَّقْهِ فَاُولٰٓئِكَ هُمُ الْفَآئِزُوْنَ ۝٥٢

५२. तथा जसले अल्लाह र उनका सन्देशवाहकको आज्ञापालन गर्छन्, तथा अल्लाहसित डराउछन् तथा आफ्नो प्रतिरक्षाका निम्ति उनलाई ढाल स्वरूप धारण गर्छन्, तिनीहरू नै कृतकार्य हुनेछन् ।

وَاَقْسَمُوْا بِاللّٰهِ جَهْدَ اَيْمَانِهِمْ لَئِنْ اَمَرْتَهُمْ لَيَخْرُجُنَّ ؕ قُلْ لَّا تُقْسِمُوْا ۚ طَاعَةٌ مَّعْرُوْفَةٌ ؕ اِنَّ اللّٰهَ خَبِيْرٌۢ بِمَا تَعْمَلُوْنَ ۝٥٣

५४. यदि तिमीले तिनीहरूलाई आदेश दिएमा तिनीहरू अवश्य प्रस्थान गर्नेछन् भनी तिनीहरू अल्लाहको दृढ शपथ खान्छन् । तिमी भन, "तिमीहरू शपथ नखाऊ, उत्तम कुराको यथोचित पालना (गर्नु नै अत्यावश्यक कुरो रहेको छ) । तिमीहरू जुन कार्य गर्छौ त्यसप्रति अल्लाह निश्चय नै पूर्णविदित छन् ।"

قُلْ اَطِيْعُوا اللّٰهَ وَاَطِيْعُوا الرَّسُوْلَ ۚ فَاِنْ تَوَلَّوْا فَاِنَّمَا عَلَيْهِ مَا حُمِّلَ وَعَلَيْكُمْ مَّا حُمِّلْتُمْ ؕ وَاِنْ تُطِيْعُوْهُ تَهْتَدُوْا ؕ وَمَا عَلَى الرَّسُوْلِ اِلَّا الْبَلٰغُ الْمُبِيْنُ ۝٥٤

५५. तिमी भन, "अल्लाहको र सन्देशवाहकको आज्ञाकारी बन ।" परन्तु यदि तिनीहरू विमुख भएमा, के स्मरण राख भने जो कोहीले त्यसो गर्छ उसप्रति सुम्पिइएको जिम्मेवारको जवाफदेही त्यही (व्यक्ति) हुनेछ, त्यसैगरी जुन जिम्मेवारी तिमीहरू माथि सुम्पिइएको छ त्यसको जवाफदेही तिमीहरू हुनेछौ । तथा यदि तिमीहरूले उनको आज्ञा पालन गऱ्यौ भने, तिमीहरू अवश्य सन्मार्गगामी हुनेछौ । तथा सन्देशवाहकको जिम्मेवारी त केवल सन्देशलाई स्पष्ट रूपमा पुऱ्याउनु रहेको छ

وَعَدَ اللّٰهُ الَّذِيْنَ اٰمَنُوْا مِنْكُمْ وَعَمِلُوا الصّٰلِحٰتِ لَيَسْتَخْلِفَنَّهُمْ فِى الْاَرْضِ كَمَا اسْتَخْلَفَ الَّذِيْنَ مِنْ قَبْلِهِمْ ۪

५६. तिमीहरूमध्ये जसले विश्वास गर्छन् तथा पुण्यकार्य गर्छन् तिनीहरूसित अल्लाहले के वाचा गरेका छन् भने, उनले तिनीहरूलाई त्यसैगरी पृथ्वीमा उत्तराधिकारी बनाउने छन् जसरी उनले तिनीहरूभन्दा पहिलाका व्यक्तिहरू(मध्येबाट) केहीलाई उत्तराधिकारी बनाएका थिए; तथा जुन धर्म

وَلَيُمَكِّنَنَّ لَهُمْ دِينَهُمُ الَّذِي ارْتَضَىٰ لَهُمْ وَلَيُبَدِّلَنَّهُم مِّن بَعْدِ خَوْفِهِمْ أَمْنًا ۚ يَعْبُدُونَنِي لَا يُشْرِكُونَ بِي شَيْئًا ۚ وَمَن كَفَرَ بَعْدَ ذَٰلِكَ فَأُولَٰئِكَ هُمُ الْفَاسِقُونَ ﴿٥٥﴾

उनले तिनीहरूका निम्ति रोजेका छन्, तिनीहरूको त्यस धर्मलाई उनले अवश्य दृढतापूर्वक स्थापना गर्नेछन्; तथा तिनीहरूको त्रासपूर्ण अवस्था पश्चात उनले अवश्य (त्यसका) बदलामा तिनीहरूलाई सुरक्षा (र शान्ति) प्रदान गर्नेछन्: तिनीहरूले मेरो उपासना गर्नेछन्, र तिनीहरूले कुनै वस्तुलाई मेरो भागीदार बनाउने छैनन् । अत: त्यसपश्चात् जो कृतघ्न बन्नेछ, तिनीहरू विद्रोही हुनेछन् ।

وَأَقِيمُوا الصَّلَاةَ وَآتُوا الزَّكَاةَ وَأَطِيعُوا الرَّسُولَ لَعَلَّكُمْ تُرْحَمُونَ ﴿٥٦﴾

५७. तथा तिमीहरू नमाज अनुष्ठान गर र जगात देऊ तथा सन्देशवाहकका आज्ञाकारी बन, ताकि तिमीहरूप्रति करुणा गरियोस् ।

لَا تَحْسَبَنَّ الَّذِينَ كَفَرُوا مُعْجِزِينَ فِي الْأَرْضِ ۚ وَمَأْوَاهُمُ النَّارُ ۖ وَلَبِئْسَ الْمَصِيرُ ﴿٥٧﴾

५८. अविश्वासी व्यक्तिहरूले पृथ्वीमा (हाम्रो योजनालाई) व्यर्थ गर्न सक्ने छन् भनी नठान; तिनीहरूको ठेगाना नर्क रहेको छ; तथा त्यो एउटा अति निकृष्ट स्थान रहेको छ ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا لِيَسْتَأْذِنكُمُ الَّذِينَ مَلَكَتْ أَيْمَانُكُمْ وَالَّذِينَ لَمْ يَبْلُغُوا الْحُلُمَ مِنكُمْ ثَلَاثَ مَرَّاتٍ ۚ مِّن قَبْلِ صَلَاةِ الْفَجْرِ وَحِينَ تَضَعُونَ ثِيَابَكُم مِّنَ الظَّهِيرَةِ وَمِن بَعْدِ صَلَاةِ الْعِشَاءِ ۚ ثَلَاثُ عَوْرَاتٍ لَّكُمْ ۚ لَيْسَ عَلَيْكُمْ وَلَا عَلَيْهِمْ جُنَاحٌ بَعْدَهُنَّ ۚ طَوَّافُونَ عَلَيْكُم بَعْضُكُمْ عَلَىٰ بَعْضٍ ۚ كَذَٰلِكَ يُبَيِّنُ اللَّهُ لَكُمُ الْآيَاتِ ۗ وَاللَّهُ عَلِيمٌ حَكِيمٌ ﴿٥٨﴾

५९. हे विश्वासीजन हो ! ती तिमीहरूका दाहिने हातअन्तर्गत रहेका व्यक्तिहरूले तथा तिमीहरूमध्ये यौवनावस्थामा नपुगेका (केटाहरू)ले (तिमीहरू रहेको स्थानमा आउनु अघि) तिमीहरूसित तीन समयमा अवश्य अनुमति मागून्, अर्थात् बिहानीको नमाजअघि, तथा गर्मीका दिनहरूमा जब तिमीहरू मध्याह्नमा आफ्ना (अतिरिक्त)वस्त्रहरू उताछौं, तथा रात्रिको (ईशाको) नमाजपछि । (यी) तीनवटा समयहरू तिमीहरूका निम्ति एकान्तका समयहरू (हुन्) । यी समयहरूबाहेक अन्य समयमा तिमीहरू अथवा तिमीहरूमाथि कुनै दोष लाग्ने छैन, किनभने तिनीहरूमध्ये केही अन्य केही व्यक्तिहरूका निकट आउजाउ गर्छौं (र) तिनीहरूले तिमीहरूका (सेवामा) आउनु जानु पर्ने हुन्छ । यसै प्रकार

अल्लाहले तिमीहरूका निम्ति निर्देशनहरू विस्तारपूर्वक वर्णन गर्ने गर्छन्; किनभने अल्लाह सर्वज्ञ, तत्त्वज्ञ छन् ।

६०. तथा जब तिमीहरूका बालकहरू यौवनावस्थामा पुग्छन्, तिनीहरूले (पनि) त्यसैगरी अनुमति लिऊन् जसरी तिनीहरूभन्दा पहिलेका -माथि उल्लेखित) व्यक्तिहरूले अनुमति लिने गर्थे । यसै प्रकार अल्लाहले आफ्ना निर्देशनहरू तिमीहरूका निम्ति स्पष्टरूपमा वर्णन गर्छन्; तथा अल्लाह सर्वज्ञ, तत्त्वज्ञ छन् ।

وَإِذَا بَلَغَ الْأَطْفَالُ مِنكُمُ الْحُلُمَ فَلْيَسْتَأْذِنُوا كَمَا اسْتَأْذَنَ الَّذِينَ مِن قَبْلِهِمْ ۚ كَذَٰلِكَ يُبَيِّنُ اللَّهُ لَكُمْ آيَاتِهِ ۗ وَاللَّهُ عَلِيمٌ حَكِيمٌ ﴿٦٠﴾

६१. अतः विवाहको उमेर नाघेका वृद्धा महिलाहरूलाई (भने) तिनीहरूले जानीबुझी आफ्नो सौन्दर्य प्रकट नगरी आफ्ना बाहिरी वस्त्रहरू उतारेर राखेमा केही पाप लाग्ने छैन । तथा यदि तिनीहरूले (आफ्नो पवित्रता रक्षा गर्न) अधिक सावधानी अपनाएमा त्यो तिनीहरूका निम्ति (अधिक) भलो हुनेछ । तथा अल्लाह सर्वश्रोता, सर्वज्ञ छन् ।

وَالْقَوَاعِدُ مِنَ النِّسَاءِ اللَّاتِي لَا يَرْجُونَ نِكَاحًا فَلَيْسَ عَلَيْهِنَّ جُنَاحٌ أَن يَضَعْنَ ثِيَابَهُنَّ غَيْرَ مُتَبَرِّجَاتٍ بِزِينَةٍ ۖ وَأَن يَسْتَعْفِفْنَ خَيْرٌ لَّهُنَّ ۗ وَاللَّهُ سَمِيعٌ عَلِيمٌ ﴿٦١﴾

६२. अन्धो व्यक्तिप्रति तथा लङ्गडो व्यक्तिति र बिमार व्यक्तिप्रति तथा तिमीहरूप्रति यदि तिमीहरूले आफ्नो घरमा भोजन खाएमा, अथवा आफ्ना पितृहरूका घरमा, अथवा आफ्नी मातृहरूका घरमा, अथवा आफ्ना भाइहरूका घरमा, अथवा आफ्नी बहिनीहरूका घरमा, अथवा आफ्ना काकाहरूका घरमा, अथवा आफ्नी फुपूहरूका घरमा, अथवा आफ्ना मामाहरूका घरमा, अथवा आफ्नी सानीआमाहरूका घरमा, अथवा त्यस (घरमा) जसको व्यवस्थापन तिमीहरूका हातमा रहेको छ अथवा आफ्नो कुनै मित्रका (घरमा) भोजन खाएमा कुनै दोप लाग्ने छैन । चाहे तिमीहरू सबै मिली एकत्रित रूपमा अथवा एक्ला-एक्लै भोजन गर त्यसप्रति

لَّيْسَ عَلَى الْأَعْمَىٰ حَرَجٌ وَلَا عَلَى الْأَعْرَجِ حَرَجٌ وَلَا عَلَى الْمَرِيضِ حَرَجٌ وَلَا عَلَىٰ أَنفُسِكُمْ أَن تَأْكُلُوا مِن بُيُوتِكُمْ أَوْ بُيُوتِ آبَائِكُمْ أَوْ بُيُوتِ أُمَّهَاتِكُمْ أَوْ بُيُوتِ إِخْوَانِكُمْ أَوْ بُيُوتِ أَخَوَاتِكُمْ أَوْ بُيُوتِ أَعْمَامِكُمْ أَوْ بُيُوتِ عَمَّاتِكُمْ أَوْ بُيُوتِ أَخْوَالِكُمْ أَوْ بُيُوتِ خَالَاتِكُمْ أَوْ مَا مَلَكْتُم مَّفَاتِحَهُ أَوْ صَدِيقِكُمْ ۚ لَيْسَ عَلَيْكُمْ جُنَاحٌ أَن تَأْكُلُوا جَمِيعًا أَوْ أَشْتَاتًا ۚ فَإِذَا دَخَلْتُم بُيُوتًا فَسَلِّمُوا عَلَىٰ أَنفُسِكُمْ تَحِيَّةً مِّنْ عِندِ اللَّهِ مُبَارَكَةً

طَيِّبَةً ۚ كَذٰلِكَ يُبَيِّنُ اللّٰهُ لَكُمُ الْاٰيٰتِ لَعَلَّكُمْ تَعْقِلُوْنَ ﴿٦١﴾

तिमीहरूमाथि कुनै दोष लाग्ने छैन । परन्तु जब तिमीहरू घरभित्र प्रवेश गर्छौ तब आफ्ना व्यक्तिहरूलाई सलाम गर्ने गर– यो तिमीहरूका प्रतिपालकका तर्फबाट मङ्गलमय र पवित्र आशीर्वाद(स्वरूप) रहेको छ । यसै प्रकार अल्लाहले तिमीहरूका निम्ति निर्देशनहरू स्पष्ट रूपमा वर्णन गर्छन् ताकि तिमीहरू बुझ्न सक ।

اِنَّمَا الْمُؤْمِنُوْنَ الَّذِيْنَ اٰمَنُوْا بِاللّٰهِ وَرَسُوْلِهٖ وَاِذَا كَانُوْا مَعَهٗ عَلٰٓى اَمْرٍ جَامِعٍ لَّمْ يَذْهَبُوْا حَتّٰى يَسْتَاْذِنُوْهُ ۗ اِنَّ الَّذِيْنَ يَسْتَاْذِنُوْنَكَ اُولٰٓئِكَ الَّذِيْنَ يُؤْمِنُوْنَ بِاللّٰهِ وَرَسُوْلِهٖ ۚ فَاِذَا اسْتَاْذَنُوْكَ لِبَعْضِ شَاْنِهِمْ فَاْذَنْ لِّمَنْ شِئْتَ مِنْهُمْ وَاسْتَغْفِرْ لَهُمُ اللّٰهَ ۗ اِنَّ اللّٰهَ غَفُوْرٌ رَّحِيْمٌ ﴿٦٢﴾

६३. वस्तुतः साँचा विश्वासीजन केवल तिनै व्यक्तिहरू हुन् जसले अल्लाहप्रति तथा उनका सन्देशवाहकप्रति विश्वास गर्छन्, तथा जब तिनीहरू कुनै महत्त्वपूर्ण सामूहिक कामले उनीसित (एकत्रित) हुन्छन् तब उनको अनुमति प्राप्त नगरी तिनीहर उठेर जाँदैनन् । निश्चय नै ती व्यक्तिहरू जसले तिम्रो अनुमति लिन्छन्, तिनीहरू नै (वास्तवमा) अल्लाह र उनका सन्देशवाहकप्रति विश्वास गर्छन् । त्यसकारण, जब तिनीहरले आफ्नो कुनै कामका निम्ति तिमीसित अनुमति माग्छन्, तब तिनीहरूमध्ये जसलाई तिमी चाहन्छौ अनुमति देउ, तथा तिनीहरूका निम्ति अल्लाहसित क्षमायाचना गर । अल्लाह निश्चयपूर्वक परम क्षमाशील, परम करुणाशील छन् ।

لَا تَجْعَلُوْا دُعَآءَ الرَّسُوْلِ بَيْنَكُمْ كَدُعَآءِ بَعْضِكُمْ بَعْضًا ۗ قَدْ يَعْلَمُ اللّٰهُ الَّذِيْنَ يَتَسَلَّلُوْنَ مِنْكُمْ لِوَاذًا ۚ فَلْيَحْذَرِ الَّذِيْنَ يُخَالِفُوْنَ عَنْ اَمْرِهٖٓ اَنْ تُصِيْبَهُمْ فِتْنَةٌ اَوْ يُصِيْبَهُمْ عَذَابٌ اَلِيْمٌ ﴿٦٣﴾

६४. तिमीहरूमध्ये कसैलाई सन्देशवाहकले गरेको आह्वानलाई तिमीहरूले परस्पर एक-अर्कालाई गरेको आह्वानसदृश नठान् । अल्लाहले तिमीहरूमध्ये जुन व्यक्तिहरू अझपनि दृष्टि बचाएर भाग्छन् तिनीहरूलाई चिन्दछन् । अतः जुन व्यक्तिहरू उनको आदेश विपरीत हिँड्छन् तिनीहरू त्यस कुराबाट सावधान रहून् जसबाट कुनै सङ्कटले तिनीहरूलाई नघेरोस् अथवा कुनै पीडादायक दण्डले तिनीहरूलाई नसमातोस्

أَلَآ إِنَّ لِلّٰهِ مَا فِي السَّمٰوٰتِ وَالْأَرْضِ ۚ قَدْ يَعْلَمُ مَآ أَنتُمْ عَلَيْهِ ۚ وَيَوْمَ يُرْجَعُونَ إِلَيْهِ فَيُنَبِّئُهُم بِمَا عَمِلُوا ۚ وَاللّٰهُ بِكُلِّ شَيْءٍ عَلِيمٌ ﴿٦٥﴾

ع ٩ ١٥

६५. सुन ! आकाशमण्डल र पृथ्वीमा जे जति वस्तुहरू छन् ती सबै अल्लाहकै हुन् । वस्तुतः तिमीहरू को हौ भन्ने कुरा अल्लाहले जान्दछन् । तथा जब तिनीहरूलाई अल्लाहतर्फ फर्काईनेछ, त्यसदिन उनले तिनीहरूले गर्ने गरेका कार्यहरूप्रति तिनीहरूलाई अवगत गर्नेछन् । तथा सम्पूर्ण वस्तुहरूलाई अल्लाहले खुबै राम्ररी जान्दछन्

سُورَةُ الْفُرْقَانِ مَكِّيَّةٌ وَهِيَ مَعَ الْبَسْمَلَةِ ثَمَانٍ وَسَبْعُونَ آيَةً وَسِتَّةُ رُكُوعَاتٍ

## अल्-फुर्क़ान

(हिजरतअघि अवतरित)

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ ﴿١﴾

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

تَبَارَكَ الَّذِي نَزَّلَ الْفُرْقَانَ عَلَىٰ عَبْدِهِ لِيَكُونَ لِلْعَالَمِينَ نَذِيرًا ﴿١﴾

२. जसले आफ्ना भृत्यमाथि फुर्क़ान (सत्य र असत्यलाई पृथक गर्ने पुस्तक) अवतीर्ण गरेका छन् तिनी अति मङ्गलमय छन्, ताकि उनी (सम्पूर्ण) जगतका निम्ति सतर्ककारी बन्न सकून् ।

الَّذِي لَهُ مُلْكُ السَّمَاوَاتِ وَالْأَرْضِ وَلَمْ يَتَّخِذْ وَلَدًا وَلَمْ يَكُن لَّهُ شَرِيكٌ فِي الْمُلْكِ وَخَلَقَ كُلَّ شَيْءٍ فَقَدَّرَهُ تَقْدِيرًا ﴿٢﴾

३. आकाशमण्डल र पृथ्वीको राज्य जसको रहेको छ ती उनी नै हुन् । तथा उनले स्वयम्का निम्ति कुनै पुत्र ग्रहण गरेका छैनन्, तथा उनको राज्यमा कोही उनको भागीदार छैन, तथा उनले नै हरेक वस्तुलाई सृष्टि गरेका हुन्, तथा उनले त्यसका निम्ति उपयुक्त मापदण्ड निर्धारण गरेका छन् ।

وَاتَّخَذُوا مِن دُونِهِ آلِهَةً لَّا يَخْلُقُونَ شَيْئًا وَهُمْ يُخْلَقُونَ وَلَا يَمْلِكُونَ لِأَنفُسِهِمْ ضَرًّا وَلَا نَفْعًا وَلَا يَمْلِكُونَ مَوْتًا وَلَا حَيَاةً وَلَا نُشُورًا ﴿٣﴾

४. तथापि तिनीहरूले उनलाई छाडी यस्ता उपास्यहरू तुल्याएका छन् जसले कुनै वस्तु सृष्टि गर्दैनन् अपितु तिनीहरू स्वयम् सृष्टि गरिन्छन्, तथा तिनीहरूमा न स्वयम्लाई हानि पुऱ्याउने शक्ति छ न त लाभ नै । तथा तिनीहरूको न मृत्युमाथि नियन्त्रण रहेको छ न जीवनमाथि, न त पुनरुत्थानमाथि नै ।

وَقَالَ الَّذِينَ كَفَرُوا إِنْ هَٰذَا إِلَّا إِفْكٌ افْتَرَاهُ وَأَعَانَهُ عَلَيْهِ قَوْمٌ آخَرُونَ فَقَدْ جَاءُوا ظُلْمًا وَزُورًا ﴿٤﴾

५. तथा अविश्वासी व्यक्तिहरू भन्छन्, "यो त केवल उसले गढेको एउटा मिथ्या कुरो हो, तथा यस कार्यमा एउटा अन्य जातिले उसलाई सहयोग गरेको छ ।" वस्तुतः तिनीहरूले एउटा अत्याचारपूर्ण कुरा प्रकट गरेका छन् तथा असत्य बोलेका छन् ।

५. तथा तिनीहरू भन्छन्, "(यी ता) प्राचीन व्यक्तिहरूका दन्त्य कथाहरू हुन्; (तथा) उसले ती कथाहरूलाई लिपिवद्ध गराएको छ, तथा ती कथाहरू उससमक्ष बिहानी र बेलुकी पढिन्छन् ।"

وَقَالُوٓا أَسَٰطِيرُ ٱلْأَوَّلِينَ ٱكْتَتَبَهَا فَهِيَ تُمْلَىٰ عَلَيْهِ بُكْرَةً وَأَصِيلًا ۝٥

६. तिमी भन, "जसले आकाशमण्डल र पृथ्वीका (सबै) भेदहरू जान्दछन् उनले नै यस (कुरान)लाई अवतीर्ण गरेका हुन् । वस्तुत: उनी परम क्षमाशील, परम करुणाशील छन् ।"

قُلْ أَنزَلَهُ ٱلَّذِي يَعْلَمُ ٱلسِّرَّ فِي ٱلسَّمَٰوَٰتِ وَٱلْأَرْضِ ۚ إِنَّهُۥ كَانَ غَفُورًا رَّحِيمًا ۝٦

७. तथा तिनीहरू भन्छन्, "यस सन्देशवाहकलाई के भएको छ र यो खाना खान्छ तथा बजारमा हिँड्छ पनि? उससित एउटा फरिस्ता (देवदूत) किन अवतीर्ण गरिएको छैन ताकि उसले उसित मिलेर मानिसहरूलाई सतर्क गरोस्?

وَقَالُوا مَالِ هَٰذَا ٱلرَّسُولِ يَأْكُلُ ٱلطَّعَامَ وَيَمْشِي فِي ٱلْأَسْوَاقِ ۙ لَوْلَآ أُنزِلَ إِلَيْهِ مَلَكٌ فَيَكُونَ مَعَهُۥ نَذِيرًا ۝٧

८. "अथवा कुनै खजाना उसप्रति अवतीर्ण गरिएको भए, अथवा उसको कुनै यस्तो बगैंचा जसबाट उसले फल खाओस रहेको भए ।" तथा अत्याचारीहरू भन्छन्, "तिमीहरू ता केवल एउटा जादुग्रस्त व्यक्तिको अनुसरण गरिरहेछौ ।"

أَوْ يُلْقَىٰٓ إِلَيْهِ كَنزٌ أَوْ تَكُونُ لَهُۥ جَنَّةٌ يَأْكُلُ مِنْهَا ۚ وَقَالَ ٱلظَّٰلِمُونَ إِن تَتَّبِعُونَ إِلَّا رَجُلًا مَّسْحُورًا ۝٨

९. हेर तिनीहरू तिम्रा सम्बन्धमा कस्ता कस्ता उदाहरणहरू दिन्छन् । अत: तिनीहरू पथभ्रष्ट भएका छन् तथा तिनीहरू कुनै मार्ग प्राप्त गर्न सक्दैनन् ।

ٱنظُرْ كَيْفَ ضَرَبُوا لَكَ ٱلْأَمْثَالَ فَضَلُّوا فَلَا يَسْتَطِيعُونَ سَبِيلًا ۝٩

१०. उनी मङ्गलमय छन्, यदि उनले चाहेमा, ती सबै कुराहरू भन्दा उत्तम कुरा (अर्थात्) यस्ता बगैंचाहरू जसमनि नहरहरू बग्ने गर्छन्– तथा महलहरू (समेत) तिमीलाई प्रदान गर्नेछन् ।

تَبَارَكَ ٱلَّذِيٓ إِن شَآءَ جَعَلَ لَكَ خَيْرًا مِّن ذَٰلِكَ جَنَّٰتٍ تَجْرِي مِن تَحْتِهَا ٱلْأَنْهَٰرُ وَيَجْعَل لَّكَ قُصُورًا ۝١٠

११. होइन, (अपितु) तिनीहरू (निर्धारित) घडीलाई पनि अस्वीकार गर्छन्, तथा जसले

بَلْ كَذَّبُوا بِٱلسَّاعَةِ ۖ وَأَعْتَدْنَا لِمَن كَذَّبَ بِٱلسَّاعَةِ سَعِيرًا ۝١١

निर्धारित घडीको अस्वीकार गर्छन् तिनीहरूका निम्ति हामीले एउटा प्रज्वलित अग्नि तयार गरेका छौं ।

إِذَا رَأَتْهُم مِّن مَّكَانٍ بَعِيدٍ سَمِعُوا لَهَا تَغَيُّظًا وَزَفِيرًا ﴿١٣﴾

१३. जब त्यसले तिनीहरूलाई टाढाबाट देख्नेछ, तिनीहरूले त्यसको आवेगपूर्ण कोध र गर्जन सुन्नेछन् ।

وَإِذَا أُلْقُوا مِنْهَا مَكَانًا ضَيِّقًا مُّقَرَّنِينَ دَعَوْا هُنَالِكَ ثُبُورًا ﴿١٤﴾

१४. तथा जब तिनीहरूलाई त्यहाँको कुनै सङ्कीर्ण स्थानमा एकैसाथ जञ्जीरमा बाँधेर फ्याँकिनेछ, तब तिनीहरूले त्यहाँ विनाशका लागि प्रार्थना गर्नेछन् ।

لَّا تَدْعُوا الْيَوْمَ ثُبُورًا وَاحِدًا وَادْعُوا ثُبُورًا كَثِيرًا ﴿١٥﴾

१५. "आज तिमीहरू एउटा विनाश (मृत्यु प्राप्ति)को प्रार्थना नगर, अपितु अनेकौं विनाशहरूको प्राप्तिका निम्ति प्रार्थना गर ।"

قُلْ أَذَٰلِكَ خَيْرٌ أَمْ جَنَّةُ الْخُلْدِ الَّتِي وُعِدَ الْمُتَّقُونَ ۚ كَانَتْ لَهُمْ جَزَاءً وَمَصِيرًا ﴿١٦﴾

१६. तिमी भन, "के त्यो (विनाश) उत्तम रहेको छ अथवा त्यो चिरञ्जीवी बगैंचा, जसको वचन धर्मनिष्ठ व्यक्तिहरूलाई दिइएको छ? त्यो उनीहरूको प्रतिदान तथा ठेगाना हुनेछ ।"

لَّهُمْ فِيهَا مَا يَشَاءُونَ خَالِدِينَ ۚ كَانَ عَلَىٰ رَبِّكَ وَعْدًا مَّسْئُولًا ﴿١٧﴾

१७. त्यहाँ तिनीहरूले जे इच्छा गर्नेछन् त्यो प्राप्त गर्नेछन्, (सदासर्वदा त्यहाँ) तिनीहरू बास गर्नेछन् यो तिम्रा प्रतिपालकको एउटा यस्तो वचन हो, जसका निम्ति (सदा) प्रार्थना गर्नु उचित हुन्छ ।

وَيَوْمَ يَحْشُرُهُمْ وَمَا يَعْبُدُونَ مِن دُونِ اللَّهِ فَيَقُولُ أَأَنتُمْ أَضْلَلْتُمْ عِبَادِي هَٰؤُلَاءِ أَمْ هُمْ ضَلُّوا السَّبِيلَ ﴿١٨﴾

१८. तथा त्यसदिन जब उनले तिनीहरूलाई र तिनीहरूले अल्लाहलाई छाडी उपासना गर्ने गरेका (वस्तु) हरूलाई एकत्रित गर्नेछन्, तब उनले सोध्नेछन्, "मेरा भृत्यहरूलाई पथभ्रष्ट गर्ने "के तिमीहरू नै हौ, अथवा तिनीहरू (स्वयम्) नै सन्मार्गबाट पथभ्रष्ट भएका

थिए?"

१९. तिनीहरूले भन्नेछन्, "तिमी पवित्र छौ! तिमीलाई छाडी अन्यलाई संरक्षकस्वरूप ग्रहण गर्नु हाम्रा निम्ति कुनै प्रकार पनि उचित थिएन; परन्तु तिमीले तिनीहरूलाई र तिनीहरूका पुर्खाहरूलाई (यस भौतिक जीवनमा) प्रचुर सम्बल प्रदान गरेका थियौ फलस्वरूप तिनीहरूले उपदेश बिर्सिए र तिनीहरू एक विनाश्य जाति हुन पुगे ।"

قَالُوْا سُبْحٰنَكَ مَا كَانَ يَنْۢبَغِيْ لَنَآ اَنْ نَّتَّخِذَ مِنْ دُوْنِكَ مِنْ اَوْلِيَآءَ وَلٰكِنْ مَّتَّعْتَهُمْ وَاٰبَآءَهُمْ حَتّٰى نَسُوا الذِّكْرَ ۚ وَكَانُوْا قَوْمًا بُوْرًا ﴿١٨﴾

२०. (तब हामी मूर्तिपुजकहरूलाई भन्नेछौं); "अब ता तिनीहरूले तिमीहरूले भनेका कुरालाई मिथ्या ठहऱ्याएका छन्, त्यसकारण आज तिमीहरूले न (दण्ड) निवारण गर्न सक्छौ न त सहयोग (प्राप्त गर्न सक्छौ) ।" तथा तिमीहरूमध्ये जो व्यक्ति अत्याचारी छ, त्यसलाई हामी ठूलो दण्ड चखाउने छौं ।

فَقَدْ كَذَّبُوْكُمْ بِمَا تَقُوْلُوْنَ ۙ فَمَا تَسْتَطِيْعُوْنَ صَرْفًا وَّلَا نَصْرًا ۚ وَمَنْ يَّظْلِمْ مِّنْكُمْ نُذِقْهُ عَذَابًا كَبِيْرًا ﴿١٩﴾

२१. तथा तिमीभन्दा पहिला हामीले जति सन्देशवाहकहरू पठाएका थियौं तिनीहरू सबैले निश्चयपूर्वक भोजन गर्ने गर्थे तथा हाट-बजारमा हिँड्ने गर्थे । तथा तिमीहरूमध्ये केहीलाई हामीले अन्य केहीका निम्ति परीक्षाको साधनस्वरूप बनाएका छौं । अतः के तिमीहरू (अब) अटल, स्थिर बन्छौ? तथा तिम्रा प्रतिपालक सर्वद्रष्टा रहेका छन् ।

وَمَآ اَرْسَلْنَا قَبْلَكَ مِنَ الْمُرْسَلِيْنَ اِلَّآ اِنَّهُمْ لَيَاْكُلُوْنَ الطَّعَامَ وَيَمْشُوْنَ فِي الْاَسْوَاقِ ۗ وَجَعَلْنَا بَعْضَكُمْ لِبَعْضٍ فِتْنَةً ۗ اَتَصْبِرُوْنَ ۚ وَكَانَ رَبُّكَ بَصِيْرًا ﴿٢٠﴾

२२. जुन व्यक्तिहरू हामीसित हुने साक्षात्कारप्रति आशावादी छैनन् तिनीहरू भन्छन्– "हामीकहाँ देवदूतहरू किन अवतीर्ण गरिएनन् त? अथवा हामी किन आफ्ना प्रतिपालकलाई देख्न सक्दैनौं त? " तिनीहरूले स्वयम्लाई निश्चय नै ठूलाठालु ठानेका छन् तथा सीमा उल्लङ्घन गर्नमा अधिक अग्रसर भएका छन् ।

وَقَالَ الَّذِيْنَ لَا يَرْجُوْنَ لِقَآءَنَا لَوْلَآ اُنْزِلَ عَلَيْنَا الْمَلٰٓئِكَةُ اَوْ نَرٰى رَبَّنَا ۗ لَقَدِ اسْتَكْبَرُوْا فِيْٓ اَنْفُسِهِمْ وَعَتَوْ عُتُوًّا كَبِيْرًا ﴿٢١﴾

يَوْمَ يَرَوْنَ الْمَلٰٓئِكَةَ لَا بُشْرٰى يَوْمَئِذٍ لِّلْمُجْرِمِيْنَ وَ يَقُوْلُوْنَ حِجْرًا مَّحْجُوْرًا ﴿٢٢﴾

२३. जुन दिन तिनीहरूले फरिस्ताहरूलाई देख्नेछन् त्यसदिन अपराधीहरूलाई कुनै प्रकारको शुभसन्देश (प्राप्त) हुनेछैन; तथा तिनीहरूले भन्नेछन् "हाय ! कुनै ठूलो बाधक (पर्खाल) रहेको भए !"

وَ قَدِمْنَآ اِلٰى مَا عَمِلُوْا مِنْ عَمَلٍ فَجَعَلْنٰهُ هَبَآءً مَّنْثُوْرًا ﴿٢٣﴾

२४. तथा तिनीहरूले गरेका हरेक कार्यहरूतर्फ हामी दृष्टि गर्नेछौं तथा त्यसलाई हामी धूलाका कणहरू सरह उडाउँनेछौं ।

اَصْحٰبُ الْجَنَّةِ يَوْمَئِذٍ خَيْرٌ مُّسْتَقَرًّا وَّاَحْسَنُ مَقِيْلًا ﴿٢٤﴾

२५. त्यसदिन स्वर्गका निवासीहरू (आफ्नो) ठेगानाको आधारमा पनि उत्तम ठहर्नेछन् तथा (आफ्नो) विश्राम गर्ने स्थानको आधारमा पनि ।

وَ يَوْمَ تَشَقَّقُ السَّمَآءُ بِالْغَمَامِ وَ نُزِّلَ الْمَلٰٓئِكَةُ تَنْزِيْلًا ﴿٢٥﴾

२६. तथा त्यसदिन जब आकाश बादल समेत फुटेर चिरा चिरा हुनेछ तथा ठूलो सङ्ख्यामा देवदूतहरू अवतीर्ण गरिनेछन्–

اَلْمُلْكُ يَوْمَئِذِ ٍالْحَقُّ لِلرَّحْمٰنِ ، وَ كَانَ يَوْمًا عَلَى الْكٰفِرِيْنَ عَسِيْرًا ﴿٢٦﴾

२७. त्यस दिन साँचो राजपाठ कृपालु (अल्लाह) कै हातमा हुनेछ; तथा अविश्वासीहरूका निम्ति त्यो एउटा कठिन दिन हुनेछ ।

وَ يَوْمَ يَعَضُّ الظَّالِمُ عَلٰى يَدَيْهِ يَقُوْلُ يٰلَيْتَنِى اتَّخَذْتُ مَعَ الرَّسُوْلِ سَبِيْلًا ﴿٢٧﴾

२८. त्यस दिन (प्रति सावधान), जब अत्याचारीले -पूर्ण असहाय भएर) आफ्नै हात टोक्दै के भन्नेछ भने, "हाय, मेले पनि यदि सन्देशवाहक कै मार्गलाई अपनाउँथें भने !"

يٰوَيْلَتٰى لَيْتَنِىْ لَمْ اَتَّخِذْ فُلَانًا خَلِيْلًا ﴿٢٨﴾

२९. "हाय, मप्रति धिक्कार ! मैले त्यस्तो व्यक्तिलाई कदापि आफ्नो मित्र नबनाएको भए !

لَقَدْ اَضَلَّنِىْ عَنِ الذِّكْرِ بَعْدَ اِذْ جَآءَنِىْ ، وَ كَانَ الشَّيْطٰنُ لِلْاِنْسَانِ خَذُوْلًا ﴿٢٩﴾

३०. "उसले मलाई त्यस उपदेशको स्मरण गर्नबाट त्यसको आगमनपश्चात् विपथगामी तुल्यायो ।" तथा सैतान मानिसको खुल्लमखुल्ला प्रतारक रहेको छ ।

وَقَالَ الرَّسُوْلُ يٰرَبِّ اِنَّ قَوْمِى اتَّخَذُوْا هٰذَا الْقُرْاٰنَ مَهْجُوْرًا ﴿٣٠﴾

३१. तथा सन्देशवाहकले के भन्नेछन् भने, "हे मेरा प्रतिपालक, वस्तुतः मेरा जातिका मानिसहरूले यस कुरानलाई (एउटा) परित्यक्त (वस्तु) सरह ठानेका छन् ।"

وَكَذٰلِكَ جَعَلْنَا لِكُلِّ نَبِيٍّ عَدُوًّا مِّنَ الْمُجْرِمِيْنَ ۭ وَكَفٰى بِرَبِّكَ هَادِيًا وَّنَصِيْرًا ﴿٣١﴾

३२. यसै प्रकार हरेक नबीका निम्ति हामीले पापी व्यक्तिहरूमध्येबाट शत्रु बनाएका छौं, तथा मार्गदर्शक र सहयोगीका रूपमा तिम्रा प्रतिपालक नै पर्याप्त रहेका छन् ।

وَقَالَ الَّذِيْنَ كَفَرُوْا لَوْلَا نُزِّلَ عَلَيْهِ الْقُرْاٰنُ جُمْلَةً وَّاحِدَةً ۚ كَذٰلِكَ ۚ لِنُثَبِّتَ بِهٖ فُؤَادَكَ وَرَتَّلْنٰهُ تَرْتِيْلًا ﴿٣٢﴾

३३. तथा ती अविश्वासी व्यक्तिहरू भन्छन्, "त्यस (नबी) प्रति एकै पटकमा कुरान किन अवतीर्ण गरिएन?" (हामीले यसलाई) यसै प्रकार (अवतीर्ण गर्‍यौं), किनभने त्यसद्वारा हामी तिम्रो हृदयलाई दृढता प्रदान गर्न सकौं । तथा यसलाई हामीले उत्तम प्रकारले व्यवस्थित गरेका छौं ।

وَلَا يَاْتُوْنَكَ بِمَثَلٍ اِلَّا جِئْنٰكَ بِالْحَقِّ وَاَحْسَنَ تَفْسِيْرًا ﴿٣٣﴾

३४. तथा तिनीहरूले तिमीसमक्ष कुनै यस्तो उदाहरण प्रस्तुत गर्दैनन्, परन्तु हामी तिमीलाई सत्य र उत्कृष्ट व्याख्या प्रदान गर्छौं

اَلَّذِيْنَ يُحْشَرُوْنَ عَلٰى وُجُوْهِهِمْ اِلٰى جَهَنَّمَ ۙ اُولٰٓئِكَ شَرٌّ مَّكَانًا وَّاَضَلُّ سَبِيْلًا ﴿٣٤﴾

३५. जुन व्यक्तिहरूलाई टाउको टेकाएर नर्कमा एकत्रित गरिनेछ– तिनीहरू नै निकृष्ट अवस्थामा पुग्नेछन् तथा सन्मार्गबाट पथभ्रष्ट भएर टाढा पुग्ने छन् ।

وَلَقَدْ اٰتَيْنَا مُوْسَى الْكِتٰبَ وَجَعَلْنَا مَعَهٗٓ اَخَاهُ هٰرُوْنَ وَزِيْرًا ﴿٣٥﴾

३६. निश्चय नै हामीले मूसालाई पुस्तक प्रदान गर्‍यौं, तथा उनका भाइ हारुनलाई (उनको) सहयोगीस्वरूप नियुक्त गर्‍यौं ।

فَقُلْنَا اذْهَبَآ اِلَى الْقَوْمِ الَّذِيْنَ كَذَّبُوْا بِاٰيٰتِنَا ۭ فَدَمَّرْنٰهُمْ تَدْمِيْرًا ﴿٣٦﴾

३७. तथा हामीले भन्यौं, "तिमीहरू दुबै त्यस जातितर्फ जाऊ, जसले हाम्रा निर्देशनहरूलाई अस्वीकार गरेका छन् ।" त्यसपछि हामीले तिनीहरूलाई पूर्णरूपले विनाश गर्‍यौं ।

وَقَوْمَ نُوْحٍ لَّمَّا كَذَّبُوا الرُّسُلَ اَغْرَقْنٰهُمْ وَجَعَلْنٰهُمْ لِلنَّاسِ اٰيَةً ۭ

३८. तथा नूहका जातिले (पनि) जब सन्देशवाहकहरूलाई अस्वीकार गरे (तब)

وَاَعْتَدْنَا لِلظّٰلِمِيْنَ عَذَابًا اَلِيْمًا ۝

हामीले तिनीहरूलाई डुबायौं, तथा मानिस जातिका निम्ति तिनीहरूलाई एउटा स्मरण चिन्हस्वरूप बनायौं । तथा अत्याचारी व्यक्तिहरूका निम्ति हामीले एउटा वेदनादायक दण्ड तयार पारेका छौं ।

وَّعَادًا وَّ ثَمُوْدَاۡ وَاَصْحٰبَ الرَّسِّ وَقُرُوْنًا بَيْنَ ذٰلِكَ كَثِيْرًا ۝

३९. तथा -हामीले) आद् र समूद तथा इनार निवासी जातिलाई (विनाश गऱ्यौं), तथा तिनीहरूका समकालीन धेरै जातिहरूलाई पनि विनाश गऱ्यौं ।

وَكُلًّا ضَرَبْنَا لَهُ الْاَمْثَالَ ز وَ كُلًّا تَبَّرْنَا تَتْبِيْرًا ۝

४०. तथा तिमीहरूमध्ये हरेक जातिका निम्ति हामीले (अतीतका मानिसहरूको) उदाहरण वर्णन गऱ्यौं, तथा एक एक गरी सबैलाई हामीले पूर्णरूपमा ध्वस्त पाऱ्यौं ।

وَلَقَدْ اَتَوْا عَلَى الْقَرْيَةِ الَّتِيْٓ اُمْطِرَتْ مَطَرَ السَّوْءِ ۭ اَفَلَمْ يَكُوْنُوْا يَرَوْنَهَا ج بَلْ كَانُوْا لَا يَرْجُوْنَ نُشُوْرًا ۝

४१. तथा जसमाथि एउटा भयानक वर्षा बर्साइएको थियो यिनीहरू निश्चय नै त्यस नगरबाट ओहोरदोहोर गरिसकेका छन् । अतः के तिनीहरूले त्यसलाई देखेनन् त? होइन, (अपितु मृत्युपश्चात्) उत्थान हुनेछैन भनी तिनीहरू ठान्छन् ।

وَ اِذَا رَاَوْكَ اِنْ يَّتَّخِذُوْنَكَ اِلَّا هُزُوًا ۭ اَهٰذَا الَّذِيْ بَعَثَ اللّٰهُ رَسُوْلًا ۝

४२. तथा जब तिनीहरूले तिमीलाई देख्छन्, तिनीहरूले तिमीलाई एउटा ठट्टाको साधनस्वरूप बनाउँछन्, तथा भन्छन् : के यो त्यही व्यक्ति हो जसलाई अल्लाहले एउटा सन्देशवाहक (स्वरूप) पठाएका हुन्?

اِنْ كَادَ لَيُضِلُّنَا عَنْ اٰلِهَتِنَا لَوْ لَآ اَنْ صَبَرْنَا عَلَيْهَا ۭ وَ سَوْفَ يَعْلَمُوْنَ حِيْنَ يَرَوْنَ الْعَذَابَ مَنْ اَضَلُّ سَبِيْلًا ۝

४३. यदि हामी आफ्ना ती उपास्यहरूप्रति दृढस्थिर नरहेका भए सम्भवतः त्यसले हामीलाई हाम्रा उपास्यहरूबाट विमुख तुल्याउने थियो । तथा जब तिनीहरूले दण्डलाई देख्नेछन् तब कोचाहिँ सन्मार्गबाट अधिक पथभ्रष्ट रहेको छ भन्ने कुरा तिनीहरूले जान्नेछन् ।

اَرَءَيْتَ مَنِ اتَّخَذَ اِلٰهَهٗ هَوٰىهُ ۭ

४४. जसले आफ्नै कुअभिलाषालाई आफ्नो

أَفَأَنْتَ تَكُونُ عَلَيْهِ وَكِيلًا ﴿٤٤﴾

उपास्य बनाएको छ के तिमीले त्यसको अवस्था देखेका छौ ? अतः के तिमी त्यस व्यक्तिको संरक्षक बन्न सक्छौ त ?

أَمْ تَحْسَبُ أَنَّ أَكْثَرَهُمْ يَسْمَعُونَ أَوْ يَعْقِلُونَ ۚ إِنْ هُمْ إِلَّا كَالْأَنْعَامِ ۖ بَلْ هُمْ أَضَلُّ سَبِيلًا ﴿٤٥﴾

४५. तिनीहरूमध्ये अधिकतर व्यक्तिहरूले सुन्छन् अथवा बुझ्छन् भनी तिमी ठान्छौ त? तिनीहरू ता केवल जनावरसरह रहेका छन्– होइन (अपितु) तिनीहरू ता मार्गबाट पूर्णरूपले विपथगामी भएका व्यक्तिहरू हुन् ।

أَلَمْ تَرَ إِلَىٰ رَبِّكَ كَيْفَ مَدَّ الظِّلَّ ۚ وَلَوْ شَاءَ لَجَعَلَهُ سَاكِنًا ۚ ثُمَّ جَعَلْنَا الشَّمْسَ عَلَيْهِ دَلِيلًا ﴿٤٦﴾

४६. तिम्रा प्रतिपालकले कसरी छायाँलाई लम्याउँछन् भन्ने कुरा तिमीले देखेका छैनौ र? तथा यदि उनले चाहेका भए, त्यसलाई उनले एउटै स्थानमा स्थिर राख्ने थिए । त्यसपछि हामीले सूर्यलाई त्यसको मार्गदर्शकस्वरूप बनाएका छौं ।

ثُمَّ قَبَضْنَاهُ إِلَيْنَا قَبْضًا يَسِيرًا ﴿٤٧﴾

४७. त्यसपछि त्यसलाई हामी विस्तारै विस्तारै आफूतर्फ तान्छौं ।

وَهُوَ الَّذِي جَعَلَ لَكُمُ اللَّيْلَ لِبَاسًا وَالنَّوْمَ سُبَاتًا وَجَعَلَ النَّهَارَ نُشُورًا ﴿٤٨﴾

४८. तथा ती उनी नै हुन्, जसले रात्रिलाई तिमीहरूका निम्ति वस्त्रस्वरूप तथा निद्रालाई विश्रामस्वरूप बनाएका छन्, तथा उनले दिनलाई उन्नति गर्नका निम्ति बनाएका छन् ।

وَهُوَ الَّذِي أَرْسَلَ الرِّيَاحَ بُشْرًا بَيْنَ يَدَيْ رَحْمَتِهِ ۚ وَأَنْزَلْنَا مِنَ السَّمَاءِ مَاءً طَهُورًا ﴿٤٩﴾

४९. त्था ती उनी नै हुन्, जसले आफ्नो करुणा (वर्षण गर्नु) भन्दा अघि हावालाई शुभसन्देशस्वरूप पठाउँछन् तथा आकाशबाट हामी पवित्र पानी अवतीर्ण गर्छौं;

لِنُحْيِيَ بِهِ بَلْدَةً مَيْتًا وَنُسْقِيَهُ مِمَّا خَلَقْنَا أَنْعَامًا وَأَنَاسِيَّ كَثِيرًا ﴿٥٠﴾

५०. तकि त्यसद्वारा हामी मृतः भूमिलाई जीवन दान गरौं, तथा त्यो (पानी) हाम्रा सृष्टिलाई बहुसंख्यक चौपाया तथा मानिसहरूलाई पिउनका निम्ति प्रदान गरौं ।

وَلَقَدْ صَرَّفْنَاهُ بَيْنَهُمْ لِيَذَّكَّرُوا فَأَبَىٰ أَكْثَرُ النَّاسِ إِلَّا كُفُورًا ﴿٥١﴾

५१. तथा यसलाई हामीले तिनीहरूसमक्ष विभिन्न तरिकारले व्याख्या गरेका छौं ताकि तिनीहरूले राम्ररी ध्यान दिऊन् परन्तु

अधिकतर मानिसहरू अकृतज्ञताका साथ अस्वीकार गर्छन् ।

وَلَوْ شِئْنَا لَبَعَثْنَا فِي كُلِّ قَرْيَةٍ نَّذِيرًا ﴿٥٢﴾

५२. यदि हामीले इच्छा गरेका भए, हरेक नगरमा हामीले एउटा सतर्ककारी पठाउन सक्ने थियौं ।

فَلَا تُطِعِ الْكٰفِرِيْنَ وَجَاهِدْهُمْ بِهٖ جِهَادًا كَبِيْرًا ﴿٥٣﴾

५३. अतः अविश्वासीहरूको कुरा नमान तथा यस (कुरान)द्वारा तिनीहरूविरुद्ध ठूलो संघर्ष गर ।

وَهُوَ الَّذِيْ مَرَجَ الْبَحْرَيْنِ هٰذَا عَذْبٌ فُرَاتٌ وَّهٰذَا مِلْحٌ اُجَاجٌ ۚ وَجَعَلَ بَيْنَهُمَا بَرْزَخًا وَّحِجْرًا مَّحْجُوْرًا ﴿٥٤﴾

५४. तथा ती उनी नै हुन्, जसले दुइवटा समुद्रहरूलाई (यसप्रकार) प्रवाहित गरेका छन् जसमध्ये एउटा स्वादिष्ट (र) मीठो, तथा अर्को चाहिँ नुनिलो (र) तीतो रहेको छ, तथा तिनीहरूका बीचमा उनले एउटा रोक र एउटा ठूलो विभाजन खडा गरेका छन् ।

وَهُوَ الَّذِيْ خَلَقَ مِنَ الْمَآءِ بَشَرًا فَجَعَلَهٗ نَسَبًا وَّصِهْرًا ۗ وَكَانَ رَبُّكَ قَدِيْرًا ﴿٥٥﴾

५५. तथा ती उनी नै हुन्, जसले पानीबाट मानिसलाई सृष्टि गरे, तथा उसका निम्ति वंशद्वारा र विवाहद्वारा नातेदार सिर्जना गरेका छन् तथा तिम्रा प्रतिपालक सर्वशक्तिसम्पन्न छन् ।

وَيَعْبُدُوْنَ مِنْ دُوْنِ اللّٰهِ مَا لَا يَنْفَعُهُمْ وَلَا يَضُرُّهُمْ ۗ وَكَانَ الْكَافِرُ عَلٰى رَبِّهٖ ظَهِيْرًا ﴿٥٦﴾

५६. तथा अल्लाहलाई छाडी तिनीहरू त्यस्ताको उपासना गर्छन् जसले तिनीहरूको न भलो गर्न सक्छ न त तिनीहरूको हानि नै । तथा अविश्वासी व्यक्ति सदा (ती) आफ्ना प्रतिपालकविरुद्ध (संघर्ष गर्ने व्यक्तिहरूको समर्थनमा) कार्य गर्छ ।

وَمَآ اَرْسَلْنٰكَ اِلَّا مُبَشِّرًا وَّنَذِيْرًا ﴿٥٧﴾

५७. तथा हामीले तिमीलाई केवल एकजना शुभसन्देशवाहक तथा सतर्ककारीस्वरूप पठाएका हौं ।

قُلْ مَآ اَسْـَٔلُكُمْ عَلَيْهِ مِنْ اَجْرٍ اِلَّا مَنْ شَآءَ اَنْ يَّتَّخِذَ اِلٰى رَبِّهٖ سَبِيْلًا ﴿٥٨﴾

५८. तिमी भन, "यस कार्यका निम्ति म तिमीहरूसित कुनै प्रतिदान मागिदन, परन्तु जसले इच्छा गर्छ, त्यसले आफ्ना प्रतिपालकतर्फ जाने मार्ग अवलम्बन गर्न

सक्छ ।"

५९. तथा तिमी उनै सदाजीवित, कदापि नमर्ने अल्लाहमाथि भरोसा राख, तथा (उनको) प्रशंसाका साथसाथै उनको गुणगान गर । तथा आफ्ना भृत्यहरूका पापहरूका ज्ञातास्वरूप उनी पर्याप्त रहेका छन् ।

وَتَوَكَّلْ عَلَى الْحَيِّ الَّذِي لَا يَمُوتُ وَسَبِّحْ بِحَمْدِهِ ۚ وَكَفَىٰ بِهِ بِذُنُوبِ عِبَادِهِ خَبِيرًا ﴿٥٩﴾

६०. उनी नै हुन् जसले आकाशमण्डल र पृथ्वी तथा तिनीहरूका बीचमा रहेका सम्पूर्ण वस्तुहरूलाई छ अवधिमा सृष्टि गरे, त्यसपश्चात् उनले स्वयम्लाई महासिंहासनमा विराजमान गरे । उनी नै परम कृपालु (अल्लाह) हुन् अत: (उनका सम्बन्धमा) तिमी पूर्ण जानकार (मानिस) सित सोध ।

الَّذِي خَلَقَ السَّمَاوَاتِ وَالْأَرْضَ وَمَا بَيْنَهُمَا فِي سِتَّةِ أَيَّامٍ ثُمَّ اسْتَوَىٰ عَلَى الْعَرْشِ ۚ الرَّحْمَٰنُ فَاسْأَلْ بِهِ خَبِيرًا ﴿٦٠﴾

६१. तथा जब तिनीहरूलाई यसो भनिन्छ, "तिमीहरू कृपालु (अल्लाह) लाई दण्डवत् प्रणाम गर," "तिनीहरू भन्छन्, "त्यो कृपालु -अल्लाह) को हो? तिमी जसजसलाई भन्छौ हामी त्यसैलाई दण्डवत गरौं?" तथा त्यस (कुरा) ले तिनीहरूको घृणा झन् वृद्धि हुन जान्छ ।

وَإِذَا قِيلَ لَهُمُ اسْجُدُوا لِلرَّحْمَٰنِ قَالُوا وَمَا الرَّحْمَٰنُ أَنَسْجُدُ لِمَا تَأْمُرُنَا وَزَادَهُمْ نُفُورًا ۩ ﴿٦١﴾

६२. उनी परम मङ्गलमय छन्, जसले आकाशमा नक्षत्रमण्डलहरू निर्माण गरेका छन् तथा उनले त्यहाँ सूर्य तथा चन्द्रमा (दुबैलाई) ज्योतिर्मय बनाएका छन् ।

تَبَارَكَ الَّذِي جَعَلَ فِي السَّمَاءِ بُرُوجًا وَجَعَلَ فِيهَا سِرَاجًا وَقَمَرًا مُنِيرًا ﴿٦٢﴾

६३. तथा ती उनी नै हुन्, जसले रात्रि र दिनलाई परस्पर एक अर्काको अनुसरणकारीस्वरूप बनाएका छन्, जसले स्मरण गर्न चाहन्छ अथवा जो कृतज्ञ बन्न चाहन्छ (त्यसको फाइदाका निम्ति) ।

وَهُوَ الَّذِي جَعَلَ اللَّيْلَ وَالنَّهَارَ خِلْفَةً لِمَنْ أَرَادَ أَنْ يَذَّكَّرَ أَوْ أَرَادَ شُكُورًا ﴿٦٣﴾

६४. तथा परम कृपालु -अल्लाह) का भृत्यहरू तिनै हुन्, जो पृथ्वीमा शिष्टतापूर्वक हिँड्ने गर्छन्, तथा जब अज्ञानी व्यक्तिहरूले

وَعِبَادُ الرَّحْمَٰنِ الَّذِينَ يَمْشُونَ عَلَى الْأَرْضِ هَوْنًا وَإِذَا خَاطَبَهُمُ الْجَاهِلُونَ قَالُوا سَلَامًا ﴿٦٤﴾

तिनीहरूलाई सम्बोधन गर्छन् तब तिनीहरू भन्छन्, " (तिमीहरूलाई) शान्ति मिलोस् !"

وَالَّذِيْنَ يَبِيْتُوْنَ لِرَبِّهِمْ سُجَّدًا وَّقِيَامًا ﴿٦٤﴾

६५. तथा ती व्यक्तिहरू पनि, जसले आफ्ना प्रतिपालकसमक्ष दण्डवत् गरेर तथा उभिएर रात बिताउँछन् ।

وَالَّذِيْنَ يَقُوْلُوْنَ رَبَّنَا اصْرِفْ عَنَّا عَذَابَ جَهَنَّمَ ۖ اِنَّ عَذَابَهَا كَانَ غَرَامًا ﴿٦٥﴾

६६. तथा जसले भन्छन्, "हे हाम्रा प्रतिपालक, हामीबाट नर्कको दण्ड निवारण गर, कारण त्यहाँको दण्ड अति लामो तथा वेदनादायक हुन्छ ।

اِنَّهَا سَآءَتْ مُسْتَقَرًّا وَّمُقَامًا ﴿٦٦﴾

६७. "त्यो विश्राम गर्ने स्थानस्वरूप अति निकृष्ट रहेको छ भने निवास गर्ने स्थानस्वरूप पनि (अति निकृष्ट छ )।

وَالَّذِيْنَ اِذَآ اَنْفَقُوْا لَمْ يُسْرِفُوْا وَلَمْ يَقْتُرُوْا وَكَانَ بَيْنَ ذٰلِكَ قَوَامًا ﴿٦٧﴾

६८. तथा ती व्यक्तिहरू जसले जब खर्च गर्छन् न तिनीहरूले अपव्यय गर्छन् न त कृपणता नै प्रदर्शन गर्छन् अपितु ती दुवैबीचको मध्यमार्ग अवलम्बन गर्छन् ।

وَالَّذِيْنَ لَا يَدْعُوْنَ مَعَ اللّٰهِ اِلٰهًا اٰخَرَ وَلَا يَقْتُلُوْنَ النَّفْسَ الَّتِيْ حَرَّمَ اللّٰهُ اِلَّا بِالْحَقِّ وَلَا يَزْنُوْنَ ۚ وَمَنْ يَّفْعَلْ ذٰلِكَ يَلْقَ اَثَامًا ﴿٦٨﴾

६९. तथा तिनीहरू, जसले अल्लाहसित अन्य कुनै उपास्यलाई पुकार्दैनन्, न त न्यायसङ्गत कारणबाहेक कुनै यस्तो व्यक्तिको हत्या गर्छन् जसको (हत्यालाई) अल्लाहले निषिद्ध गरेका छन्, न तिनीहरू व्यभिचार (पूर्ण कार्य )गर्छन्, तथा जसले त्यस्ता कार्यहरू गर्छ उसले आफ्नो पापको दण्ड पाउनेछ ।

يُّضٰعَفْ لَهُ الْعَذَابُ يَوْمَ الْقِيٰمَةِ وَيَخْلُدْ فِيْهٖ مُهَانًا ﴿٦٩﴾

७०. पुनरुत्थानका दिन त्यसको दण्ड दोब्बर गरिनेछ, तथा त्यो व्यक्ति अपमानित भइ सदा त्यहाँ रहनेछ ।

اِلَّا مَنْ تَابَ وَاٰمَنَ وَعَمِلَ عَمَلًا صَالِحًا فَاُولٰٓئِكَ يُبَدِّلُ اللّٰهُ سَيِّاٰتِهِمْ حَسَنٰتٍ ۚ وَكَانَ اللّٰهُ غَفُوْرًا رَّحِيْمًا ﴿٧٠﴾

७१. सिवाय ती व्यक्तिहरू, जसले प्रायश्चित गर्छन्, तथा विश्वास स्थापना गर्छन् तथा पुण्यकर्म गर्छन् यस्ता व्यक्तिहरूका सम्बन्धमा भने, अल्लाहले तिनीहरूका अपकर्मलाई पनि पुण्यकर्ममा परिवर्तन गरिदिने छन्, तथा अल्लाह परम क्षमाशील, परम करुणाशील

छन्,

وَمَنْ تَابَ وَعَمِلَ صَالِحًا فَإِنَّهُ يَتُوبُ إِلَى اللَّهِ مَتَابًا ﴿٧١﴾

७२. तथा जुन व्यक्तिहरू प्रायश्चित्त गर्छन् तथा पुण्य -कार्यहरू) गर्छन् वस्तुतः तिनीहरू नै (सत्य) प्रायश्चित्त गरी अल्लाहतर्फ फर्कन्छन् ।

وَالَّذِينَ لَا يَشْهَدُونَ الزُّورَ وَإِذَا مَرُّوا بِاللَّغْوِ مَرُّوا كِرَامًا ﴿٧٢﴾

७३. तथा ती व्यक्तिहरू, जसले (कदापि) मिथ्या साक्षी दिँदैनन्, तथा जब तिनीहरू कुनै अनर्थ कुराको निकटबाट गमन गर्छन् तब शिष्टतापूर्वक अघि बढ्छन् ।

وَالَّذِينَ إِذَا ذُكِّرُوا بِآيَاتِ رَبِّهِمْ لَمْ يَخِرُّوا عَلَيْهَا صُمًّا وَعُمْيَانًا ﴿٧٣﴾

७४. तथा ती व्यक्तिहरू, जब तिनीहरूलाई तिनीहरूका प्रतिपालकका निर्देशनहरूको स्मरण गराइन्छ, तब त्यसप्रति कानो र अन्धोसरह व्यवहार गर्दैनन्,

وَالَّذِينَ يَقُولُونَ رَبَّنَا هَبْ لَنَا مِنْ أَزْوَاجِنَا وَذُرِّيَّاتِنَا قُرَّةَ أَعْيُنٍ وَاجْعَلْنَا لِلْمُتَّقِينَ إِمَامًا ﴿٧٤﴾

७५. तथा ती व्यक्तिहरू जसले के भन्छन् भने, "हे हाम्रा प्रतिपालक, हाम्रा जीवनसाथी हरू तथा सन्तानहरूका तर्फबाट हाम्रा नेत्रहरूलाई शीतलता (आनन्द) प्रदान गर, तथा हामी (मध्ये हरेक) लाई धर्मपरायण व्यक्तिहरूका धर्मगुरु बनाऊ ।"

أُولَٰئِكَ يُجْزَوْنَ الْغُرْفَةَ بِمَا صَبَرُوا وَيُلَقَّوْنَ فِيهَا تَحِيَّةً وَسَلَامًا ﴿٧٥﴾

७६. यिनीहरू नै ती व्यक्तिहरू हुन् जसलाई तिनीहरूको धैर्यधारणका कारण प्रतिदानस्वरूप (स्वर्गमा) उच्चस्थान प्रदान गरिनेछ, तथा त्यहाँ तिनीहरूलाई शुभकामना र शान्तिको (प्रार्थनाका) साथ अभिनन्दन गरिनेछ,

خَالِدِينَ فِيهَا ۚ حَسُنَتْ مُسْتَقَرًّا وَمُقَامًا ﴿٧٦﴾

७७. त्यहाँ तिनीहरू सदा रहनेछन् । विश्राम गर्ने स्थान र निवासस्थानस्वरूप त्यो अत्यन्त उत्कृष्ट स्थल रहेको छ ।

قُلْ مَا يَعْبَؤُا بِكُمْ رَبِّي لَوْلَا دُعَآؤُكُمْ ۚ فَقَدْ كَذَّبْتُمْ فَسَوْفَ يَكُونُ لِزَامًا ﴿٧٨﴾

७८. तिमी (अविश्वासी व्यक्तिहरूलाई) भनिदेउ, "तिमीहरूले (उनको) प्रार्थना नगरेमा मेरा प्रतिपालकले तिमीहरूको कुनै पर्वाह गर्नेछैनन् । तिमीहरूले वास्तवमा (सत्यको) तिरस्कार गरेका छौ, तथा (तिमीहरूको अस्वीकारको फलस्वरूप) अब (त्यसको दण्ड तिमीहरूसित) टाँसिने छ ।"



## अल्-शू'अरा'
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु अल्लाहको नाममा

طٰسٓمّٓ ②

२. ता सिन् मिम्*

تِلْكَ اٰيٰتُ الْكِتٰبِ الْمُبِيْنِ ③

३. यी स्पष्ट वर्णनकारी पुस्तकका आयातहरू हुन् ।

لَعَلَّكَ بَاخِعٌ نَّفْسَكَ اَلَّا يَكُوْنُوْا مُؤْمِنِيْنَ ④

४. तिनीहरू किन विश्वास गर्दैनन् भन्ने चिन्ताले सम्भवत: तिमीले आफ्नो ज्यान नै दिनेछौ ।

اِنْ نَّشَاْ نُنَزِّلْ عَلَيْهِمْ مِّنَ السَّمَآءِ اٰيَةً فَظَلَّتْ اَعْنَاقُهُمْ لَهَا خٰضِعِيْنَ ⑤

५. यदि हामीले चाहेमा, आकाशबाट तिनीहरूसमक्ष हामी यस्तो चिह्न अवतीर्ण गर्न सक्छौं, जसका सामुन्ने तिनीहरूको गर्धन झुक्नेछ ।

وَمَا يَاْتِيْهِمْ مِّنْ ذِكْرٍ مِّنَ الرَّحْمٰنِ مُحْدَثٍ اِلَّا كَانُوْا عَنْهُ مُعْرِضِيْنَ ⑥

६. तथा कृपालु (अल्लाह) का तर्फबाट तिनीहरूसमक्ष यस्तो कुनै नवीन उपदेश (ग्रन्थ) आएको छैन जसबाट तिनीहरू विमुख भएका नहुन् ।

فَقَدْ كَذَّبُوْا فَسَيَاْتِيْهِمْ اَنْبٰٓؤُا مَا كَانُوْا بِهٖ يَسْتَهْزِءُوْنَ ⑦

७. तिनीहरूले (यसप्रति) मिथ्यास्वरूप व्यवहार गरेका छन्, परन्तु जसप्रति तिनीहरू ठट्टा गर्ने गर्थे, शीघ्र नै तिनीहरू समक्षत्यसको -वास्तविक) समाचार प्रकट हुनेछ ।

اَوَلَمْ يَرَوْا اِلَى الْاَرْضِ كَمْ اَنْۢبَتْنَا فِيْهَا مِنْ كُلِّ زَوْجٍ كَرِيْمٍ ⑧

८. के पृथ्वीमा हामीले विभिन्न प्रकारका उत्कृष्ट उद्‌भिद्‌हरू उब्जाएको तिनीहरूले ध्यानपूर्वक हेरेका छैनन्?

* परम पवित्र, सर्वद्रष्टा, सर्वज्ञ अल्लाह !

إِنَّ فِي ذَٰلِكَ لَآيَةً ۖ وَمَا كَانَ أَكْثَرُهُم مُّؤْمِنِينَ ⑨

९. वस्तुत: यस (कुरा) मा एउटा चिह्न रहेको छ, परन्तु तिनीहरूमध्ये अधिकतर व्यक्तिहरूले विश्वास गर्दैनन् ।

وَإِنَّ رَبَّكَ لَهُوَ الْعَزِيزُ الرَّحِيمُ ⑩

१०. तथा तिम्रा प्रतिपालक नै वास्तवमा परम पराक्रमी, परम करुणाशील छन् ।

وَإِذْ نَادَىٰ رَبُّكَ مُوسَىٰ أَنِ ائْتِ الْقَوْمَ الظَّالِمِينَ ⑪

११. तथा (स्मरण गर) जब तिम्रा प्रतिपालकले मूसालाई (के भन्दै) बोलाएका थिए (भने), "अत्याचारी व्यक्तिहरू (भए) तर्फ प्रस्थान गर –

قَوْمَ فِرْعَوْنَ ۚ أَلَا يَتَّقُونَ ⑫

१२. "(अर्थात्) फिरौनका मानिसहरूतर्फ ! के तिनीहरू अल्लाहसित डराउँदैनन्?"

قَالَ رَبِّ إِنِّي أَخَافُ أَن يُكَذِّبُونِ ⑬

१३. उनले भने, "हे मेरा प्रतिपालक, तिनीहरूले मसित मिथ्यावादीसरह व्यवहार गर्लान् भन्ने मलाई आशङ्का छ ।

وَيَضِيقُ صَدْرِي وَلَا يَنطَلِقُ لِسَانِي فَأَرْسِلْ إِلَىٰ هَارُونَ ⑭

१४. "तथा मेरो छाती सङ्कीर्ण रहेको छ तथा मेरो जिब्रो प्रष्ट चल्दैन, त्यसकारण हारुनतर्फ (वाणी) पठाउ ।

وَلَهُمْ عَلَيَّ ذَنبٌ فَأَخَافُ أَن يَقْتُلُونِ ⑮

१५. "तथा केही अपराधको (आरोप) का कारण तिनीहरूले मलाई खोजिरहेछन्, अत: तिनीहरूले मेरो हत्या गर्लान् भनी म डराउँछु ।"

قَالَ كَلَّا ۖ فَاذْهَبَا بِآيَاتِنَا ۖ إِنَّا مَعَكُم مُّسْتَمِعُونَ ⑯

१६. (अल्लाहले) भने, "त्यसो हुनेछैन, अत: तिमीहरू दुबै हाम्रा निर्देशनहरू लिएर जाऊ, हामी तिमीहरूसितै छौं (तथा) हामी तिमीहरूको प्रार्थना सुन्नेछौं ।"

فَأْتِيَا فِرْعَوْنَ فَقُولَا إِنَّا رَسُولُ رَبِّ الْعَالَمِينَ ⑰

१७. अत: तिमीहरू फिरौनसमक्ष जाऊ र भन, "हामी विश्वब्रह्माण्डका प्रतिपालकका (तर्फबाट) सन्देशवाहक हौं,"

أَنْ أَرْسِلْ مَعَنَا بَنِي إِسْرَائِيلَ ⑱

१८. "इजरायलका सन्तानलाई हामीसित जान देउ (भनी तिमीलाई भन्नका निम्ति

आएका हौं) ।"

१९. (फिरौन) ले भन्यो, "के हामीले तिमीलाई बाल्यकालमा पालेर हुर्काएका थिएनौं र? तथा तिमीले आफ्नो जीवनका (धेरै) वर्षहरू हामीसित बिताएका थियौ ।

قَالَ أَلَمْ نُرَبِّكَ فِينَا وَلِيدًا وَلَبِثْتَ فِينَا مِنْ عُمُرِكَ سِنِينَ ﴿١٨﴾

२०. "तथा जुन काम तिमीले गर्नु थियो त्यो काम तिमीले गर्‍यौ, तथा तिमी अकृतज्ञ व्यक्तिहरूमध्ये हुन पुगेका छौ ।"

وَفَعَلْتَ فَعْلَتَكَ الَّتِي فَعَلْتَ وَأَنْتَ مِنَ الْكٰفِرِينَ ﴿١٩﴾

२१. (मूसाले) भने, "मैले त्यो काम त्यसबेला गरेको थिएँ जब म गल्ती गर्नेमध्येको (एक) थिएँ ।

قَالَ فَعَلْتُهَا إِذًا وَأَنَا مِنَ الضَّالِّينَ ﴿٢٠﴾

२२. "अतः जब मलाई तिमीहरूको डर लाग्यो म तिमीहरूबाट भागेर हिँडें तब मलाई मेरा प्रतिपालकले शासनाधिकार र तत्त्वज्ञान प्रदान गरे तथा मलाई एउटा सन्देशवाहक बनाए ।"

فَفَرَرْتُ مِنْكُمْ لَمَّا خِفْتُكُمْ فَوَهَبَ لِي رَبِّي حُكْمًا وَجَعَلَنِي مِنَ الْمُرْسَلِينَ ﴿٢١﴾

२३. इजरायलका सन्तानालाई तिमीले आफ्ना दास बनाएका छौ त्यसकारण तिमीले त्यस (मप्रति गरेको) अनुग्रहलाई व्यंग्यको रूपमा स्मरण गराइरहेछौ ।"

وَتِلْكَ نِعْمَةٌ تَمُنُّهَا عَلَيَّ أَنْ عَبَّدْتَّ بَنِي إِسْرَاءِيلَ ﴿٢٢﴾

२४. फिरौनले भन्यो, "तथा विश्वब्रह्माण्डको प्रतिपालक को हो त?"

قَالَ فِرْعَوْنُ وَمَا رَبُّ الْعٰلَمِينَ ﴿٢٣﴾

२५. (मूसाले) भने, "यदि तिमीहरू विश्वास गर्छौ भने -उनी) आकाशमण्डल र पृथ्वी तथा ती दुबैबीच रहेका सम्पूर्ण वस्तुहरूका स्वामी नै (हुन्) ।

قَالَ رَبُّ السَّمٰوٰتِ وَالْأَرْضِ وَمَا بَيْنَهُمَا إِنْ كُنْتُمْ مُوقِنِينَ ﴿٢٤﴾

२६. (फिरौनले) आफू छेउछाउ बसेका व्यक्तिहरूलाई भन्यो, "के तिमीहरू सुनिरहेका छैनौ,"

قَالَ لِمَنْ حَوْلَهُ أَلَا تَسْتَمِعُونَ ﴿٢٥﴾

قَالَ رَبُّكُمْ وَرَبُّ اٰبَآئِكُمُ الْاَوَّلِيْنَ ﴿٢٦﴾

२७. (मूसाले) भने, "उनी नै तिमीहरूका प्रतिपालक हुन् र तिमीहरूभन्दा पहिला रहेका तिमीहरूका पुर्खाहरूका (पनि उनी नै) प्रतिपालक (थिए) ।"

قَالَ اِنَّ رَسُوْلَكُمُ الَّذِيْٓ اُرْسِلَ اِلَيْكُمْ لَمَجْنُوْنٌ ﴿٢٧﴾

२८. (फिरौनले) भन्यो, "यो तिमीहरूतर्फ पठाइएको तिमीहरूको सन्देशवाहक निश्चयपूर्वक पागल छ ।"

قَالَ رَبُّ الْمَشْرِقِ وَالْمَغْرِبِ وَمَا بَيْنَهُمَا ۭ اِنْ كُنْتُمْ تَعْقِلُوْنَ ﴿٢٨﴾

२९. (मूसाले) भने, "यदि तिमीहरूमा बोधशक्ति रहेको छ भने, उनी नै पूर्व र पश्चिम तथा ती दुबै दिशाका बीचमा रहेका सम्पूर्ण वस्तुहरूका प्रतिपालक हुन् ।"

قَالَ لَئِنِ اتَّخَذْتَ اِلٰهًا غَيْرِيْ لَاَجْعَلَنَّكَ مِنَ الْمَسْجُوْنِيْنَ ﴿٢٩﴾

३०. (फिरौनले) भन्यो, "यदि मलाई छाडी अन्य कसैलाई तिमीले उपास्य बनाएमा म अवश्य तिमीलाई बन्दी बनाउनेछु ।"

قَالَ اَوَلَوْ جِئْتُكَ بِشَيْءٍ مُّبِيْنٍ ﴿٣٠﴾

३१. (मूसाले) भने, "के यद्यपि मैले तिमीसमक्ष स्पष्ट कुरा प्रस्तुत गरे तापनि !"

قَالَ فَاْتِ بِهٖٓ اِنْ كُنْتَ مِنَ الصّٰدِقِيْنَ ﴿٣١﴾

३२. (फिरौनले) भन्यो, "यदि तिमी साँचा हौ भने त्यस कुरालाई प्रस्तुत गर ।"

فَاَلْقٰى عَصَاهُ فَاِذَا هِيَ ثُعْبَانٌ مُّبِيْنٌ ﴿٣٢﴾

३३. अतः उनले आफ्नो लौरो धर्तीमा फ्याँके, तथा हेर, त्यो स्पष्ट देखिने सर्प हुन पुग्यो ।

وَّنَزَعَ يَدَهٗ فَاِذَا هِيَ بَيْضَآءُ لِلنّٰظِرِيْنَ ﴿٣٣﴾

३४. तथा उनले आफ्नो हात बाहिर निकाले, तथा हेर ! त्यो दर्शकहरूका दृष्टिमा अति सेता -उज्ज्वल) देखिन पुग्यो

قَالَ لِلْمَلَاِ حَوْلَهٗٓ اِنَّ هٰذَا لَسٰحِرٌ عَلِيْمٌ ﴿٣٤﴾

३५. (फिरौनले) आफू छेउछाउ बसेका मुखियाहरूलाई भन्यो, "यो ता निश्चय नै एउटा पारङ्गत जादुगर हो ।"

يُّرِيْدُ اَنْ يُّخْرِجَكُمْ مِّنْ اَرْضِكُمْ بِسِحْرِهٖ ۖ فَمَاذَا تَاْمُرُوْنَ ﴿٣٦﴾

३६. "यसले आफ्नो जादुद्वारा तिमीहरूलाई आफ्नो देशबाट निकाल्न चाहन्छ । अत: अब तिमीहरू के परामर्श दिन्छौ त?"

قَالُوْٓا اَرْجِهْ وَاَخَاهُ وَابْعَثْ فِى الْمَدَآئِنِ حٰشِرِيْنَ ﴿٣٧﴾

३७. तिनीहरूले भने, "त्यसलाई र त्यसको भाइलाई (केही समयका निम्ति) छाडिदेऊ तथा नगरहरूतर्फ मानिसहरूलाई आह्वान गर्ने व्यक्तिहरू पठाऊ,

يَاْتُوْكَ بِكُلِّ سَحَّارٍ عَلِيْمٍ ﴿٣٨﴾

३८. "तिनीहरूले हरेक पारङ्गत जादुगरहरूलाई तिमीसमक्ष एकत्रित गरेर ल्याउन् ।"

فَجُمِعَ السَّحَرَةُ لِمِيْقَاتِ يَوْمٍ مَّعْلُوْمٍ ﴿٣٩﴾

३९. अत: निश्चित दिनको निर्धारित समयमा सबै जादुगरलाई एकत्रित गरियो ।

وَّقِيْلَ لِلنَّاسِ هَلْ اَنْتُمْ مُّجْتَمِعُوْنَ ﴿٤٠﴾

४०. तथा मानिसहरूलाई भनियो, "के तिमीहरू (पनि) एकत्रित हुन चाहन्छौ ?

لَعَلَّنَا نَتَّبِعُ السَّحَرَةَ اِنْ كَانُوْا هُمُ الْغٰلِبِيْنَ ﴿٤١﴾

४१. ताकि यदि जादुगरहरू विजयी भएमा हामी तिनीहरूको अनुसरण गरौं?"

فَلَمَّا جَآءَ السَّحَرَةُ قَالُوْا لِفِرْعَوْنَ اَئِنَّ لَنَا لَاَجْرًا اِنْ كُنَّا نَحْنُ الْغٰلِبِيْنَ ﴿٤٢﴾

४२. तथा जब जादुगरहरू आए, तिनीहरूले फिरौनलाई भने, "यदि हामी विजयी भयौं भने के हामीलाई कुनै पुरस्कार प्राप्त हुनेछ त?"

قَالَ نَعَمْ وَاِنَّكُمْ اِذًا لَّمِنَ الْمُقَرَّبِيْنَ ﴿٤٣﴾

४३. उसले भन्यो, "अवश्य मिल्नेछ, अपितु त्यसो भएमा तिमीहरू अनुग्रहप्राप्त व्यक्तिहरूमध्येका बन्नेछौ ।"

قَالَ لَهُمْ مُّوْسٰٓى اَلْقُوْا مَآ اَنْتُمْ مُّلْقُوْنَ ﴿٤٤﴾

४४. मूसाले तिनीहरूलाई भने, "(अब) तिमीहरू जे फ्याँक्न चाहन्छौ फ्याँक ।"

فَاَلْقَوْا حِبَالَهُمْ وَعِصِيَّهُمْ وَقَالُوْا بِعِزَّةِ فِرْعَوْنَ اِنَّا لَنَحْنُ الْغٰلِبُوْنَ ﴿٤٥﴾

४५. अत: तिनीहरूले आफ्ना डोरीहरू र लौराहरू फ्याँके र भने, "फिरौनको प्रतिष्ठाको शपथ, हामी नै अवश्य विजय

हुनेछौं ।"

فَأَلْقَىٰ مُوسَىٰ عَصَاهُ فَإِذَا هِيَ تَلْقَفُ مَا يَأْفِكُونَ ﴿٤٥﴾

४६. तब मूसाले आफ्नो लौरो धर्तीमा फ्याँके, तथा हेर ! तिनीहरूले त्यहाँ (तत्काल) गढेका वस्तुहरूलाई त्यसले निल्न लाग्यो ।

فَأُلْقِيَ السَّحَرَةُ سَاجِدِينَ ﴿٤٦﴾

४७. तब जादुगरहरूलाई साष्टाङ्ग दण्डवत गर्न बाध्य तुल्याइयो ।

قَالُوا آمَنَّا بِرَبِّ الْعَالَمِينَ ﴿٤٧﴾

४८. तिनीहरूले भने, "हामी विश्वब्रह्माण्डका प्रतिपालकप्रति विश्वास गर्छौं ।"

رَبِّ مُوسَىٰ وَهَارُونَ ﴿٤٨﴾

४९. "जो मूसा र हारुनका प्रतिपालक रहेका छन् ।"

قَالَ آمَنتُمْ لَهُ قَبْلَ أَنْ آذَنَ لَكُمْ ۖ إِنَّهُ لَكَبِيرُكُمُ الَّذِي عَلَّمَكُمُ السِّحْرَ فَلَسَوْفَ تَعْلَمُونَ ۚ لَأُقَطِّعَنَّ أَيْدِيَكُمْ وَأَرْجُلَكُم مِّنْ خِلَافٍ وَلَأُصَلِّبَنَّكُمْ أَجْمَعِينَ ﴿٤٩﴾

५०. (फिरौनले) भन्यो, "मेरो अनुमतिबिना नै तिमीहरूले उसप्रति विश्वास गऱ्यौ त? त्यो अवश्य तिमीहरूको मुखिया हुनुपर्छ, जसले तिमीहरूलाई जादु सिकाएको छ । परन्तु तिमीहरूले (त्यसको परिणाम पनि चाँडै) जान्नेछौ । म अवश्यपूर्वक तिमीहरूका हात र खुट्टाहरू विपरित दिशाबाट काट्ने छु र तिमीहरू सबैलाई अवश्य म शुलीमा चढाउने छु ।"

قَالُوا لَا ضَيْرَ ۖ إِنَّا إِلَىٰ رَبِّنَا مُنقَلِبُونَ ﴿٥٠﴾

५१. तिनीहरूले भने, "यसमा केही हानि छैन, हामीले ता आफ्नै प्रतिपालकतर्फ फर्कनु छ ।

إِنَّا نَطْمَعُ أَن يَغْفِرَ لَنَا رَبُّنَا خَطَايَانَا أَن كُنَّا أَوَّلَ الْمُؤْمِنِينَ ﴿٥١﴾

५२. "निश्चय नै हाम्रा प्रतिपालकले हामीलाई हाम्रा पापहरूप्रति क्षमा प्रदान गर्लान् भन्ने हामी आशा राख्छौं, किनभने हामी सर्वप्रथम विश्वास गर्ने व्यक्तिहरूमध्ये रहेका छौं ।"

وَأَوْحَيْنَا إِلَىٰ مُوسَىٰ أَنْ أَسْرِ بِعِبَادِي إِنَّكُم مُّتَّبَعُونَ ﴿٥٢﴾

५३. तथा हामीले मूसालाई (के भन्दै) आकाशवाणी गऱ्यौं (भने), "रात्रि समयमा

मेरा भृत्यहरूलाई लिएर जाउ, तिमीहरूको अवश्य नै पिछा गरिनेछ ।"

فَأَرْسَلَ فِرْعَوْنُ فِي الْمَدَآئِنِ حٰشِرِيْنَ ﴿٥٣﴾

५४. तथा फिरौनले (के भन्दै) नगरहरूतर्फ आह्वानकर्ताहरूलाई पठायो भने,

اِنَّ هٰٓؤُلَآءِ لَشِرْذِمَةٌ قَلِيْلُوْنَ ﴿٥٤﴾

५५. "तिनीहरूको जमात ता सानो छ,

وَاِنَّهُمْ لَنَا لَغَآئِظُوْنَ ﴿٥٥﴾

५६. तथा तिनीहरूले हामीलाई क्रोधित तुल्याएका छन्,

وَاِنَّا لَجَمِيْعٌ حٰذِرُوْنَ ﴿٥٦﴾

५७. तथा हामी बहुसंख्यक (पूर्णरूपले तयार) र सतर्क छौं ।"

فَاَخْرَجْنٰهُمْ مِّنْ جَنّٰتٍ وَّعُيُوْنٍ ﴿٥٧﴾

५८. अतः हामीले तिनीहरूलाई बगैंचाहरू र पानीका मूलहरूबाट निष्कासित गऱ्यौं,

وَّكُنُوْزٍ وَّمَقَامٍ كَرِيْمٍ ﴿٥٨﴾

५९. तथा खजाना र सम्मानपूर्वक स्थानबाट (पनि) ।

كَذٰلِكَ ۚ وَاَوْرَثْنٰهَا بَنِيْٓ اِسْرَآءِيْلَ ﴿٥٩﴾

६०. (त्यो घटना) यसैप्रकार (घटेको थियो) तथा इजरायलका सन्तानलाई हामीले ती वस्तुहरूका उत्तराधिकारी बनायौं –

فَاَتْبَعُوْهُمْ مُّشْرِقِيْنَ ﴿٦٠﴾

६१. तथा तिनीहरू सूर्योदयका समयमा उनीहरूको पिछा गर्दै उनीहरूका निकट पुगे ।

فَلَمَّا تَرَآءَ الْجَمْعٰنِ قَالَ اَصْحٰبُ مُوْسٰٓى اِنَّا لَمُدْرَكُوْنَ ﴿٦١﴾

६२. जब दुबै समूहले परस्पर एकअर्कालाई देखे तब मूसाका साथीहरूले भने, "हामीले अवश्य पकडा खायौं ।"

قَالَ كَلَّا ۚ اِنَّ مَعِيَ رَبِّيْ سَيَهْدِيْنِ ﴿٦٢﴾

६३. उनले भने, "होइन, (त्यसो नभन)" निश्चय नै मेरा प्रतिपालक मसित छन् । उनले अवश्य मलाई उचित मार्ग देखाउनेछन् ।

فَاَوْحَيْنَآ اِلٰى مُوْسٰٓى اَنِ اضْرِبْ بِّعَصَاكَ الْبَحْرَ ۭ فَانْفَلَقَ فَكَانَ كُلُّ فِرْقٍ كَالطَّوْدِ الْعَظِيْمِ ﴿٦٣﴾

६४. तब हामीले मूसालाई (के भन्दै) आकाशवाणी गऱ्यौं (भने), "आफ्नो लौरोले समुद्रमा हिर्काउ ।" तब त्यो (समुद्र) फुट्यो, तथा त्यसको हरेक अंश एउटा पर्वततुल्य (देखिन) लाग्यो ।

وَاَزْلَفْنَا ثَمَّ الْاٰخَرِيْنَ ﴿٦٤﴾

६५. तथा अर्को समूहलाई हामीले त्यस स्थानमा पुग्न दियौं ।

وَاَنْجَيْنَا مُوْسٰى وَمَنْ مَّعَهٗٓ اَجْمَعِيْنَ ﴿٦٥﴾

६६. तथा हामीले मूसा र उनीसित रहेका व्यक्तिहरूलाई बचायौं ।

ثُمَّ اَغْرَقْنَا الْاٰخَرِيْنَ ﴿٦٦﴾

६७. त्यसपछि अर्को समूहलाई हामीले डुबायौं ।

اِنَّ فِيْ ذٰلِكَ لَاٰيَةً ۭ وَمَا كَانَ اَكْثَرُهُمْ مُّؤْمِنِيْنَ ﴿٦٧﴾

६८. वस्तुतः यसमा एउटा चिह्न रहेको छ, परन्तु तिनीहरूमध्ये अधिकतर व्यक्तिहरूले विश्वास गर्दैनन् ।

وَاِنَّ رَبَّكَ لَهُوَ الْعَزِيْزُ الرَّحِيْمُ ﴿٦٨﴾

६९. तथा तिम्रा प्रतिपालक नै निश्चयपूर्वक परम पराक्रमी, परम करुणाशील छन् ।

وَاتْلُ عَلَيْهِمْ نَبَاَ اِبْرٰهِيْمَ ﴿٦٩﴾

७०. तिनीहरूसमक्ष इब्राहिमको घटना वर्णन गर ।

اِذْ قَالَ لِاَبِيْهِ وَقَوْمِهٖ مَا تَعْبُدُوْنَ ﴿٧٠﴾

७१. जब उनले आफ्ना पिता र आफ्ना जाति (का मानिसहरू)लाई सोधे, "तिमीहरू कसको उपासना गर्छौ ?"

قَالُوْا نَعْبُدُ اَصْنَامًا فَنَظَلُّ لَهَا عٰكِفِيْنَ ﴿٧١﴾

७२. तिनीहरूले भने, "हामी मूर्तिहरूको उपासना गर्छौं, तथा हामी तिनीहरूप्रति नै समर्पित रहँदै आएका छौं ।"

قَالَ هَلْ يَسْمَعُوْنَكُمْ اِذْ تَدْعُوْنَ ﴿٧٢﴾

७३. उनले भने, "जब तिमीहरू तिनीहरूलाई पुकार्छौ (तब) के तिनीहरूले तिमीहरूको पुकार सुन्न सक्छन् त?"

أَوْ يَنفَعُونَكُمْ أَوْ يَضُرُّونَ ﴿٧٣﴾

७४. "अथवा के तिमीहरूको कुनै लाभ अथवा हानि गर्ने गर्छन्?"

قَالُوا بَلْ وَجَدْنَا آبَاءَنَا كَذَٰلِكَ يَفْعَلُونَ ﴿٧٤﴾

७५. तिनीहरूले भने, "होइन, अपितु हामीले आफ्ना पुर्खालाई त्यसै गर्दैआएको पाएका छौं ।"

قَالَ أَفَرَأَيْتُم مَّا كُنتُمْ تَعْبُدُونَ ﴿٧٥﴾

७६. उनले भने, "जसको तिमीहरू उपासना गर्दै आएका छौ तिनीहरूबारे तिमीहरूको के सोचाइ रहेको छ –

أَنتُمْ وَآبَاؤُكُمُ الْأَقْدَمُونَ ﴿٧٦﴾

७७. "तिमीहरूको र (तिमीहरूभन्दा) पहिलाका तिमीहरूका पुर्खाको ।"

فَإِنَّهُمْ عَدُوٌّ لِّي إِلَّا رَبَّ الْعَالَمِينَ ﴿٧٧﴾

७८. "तिनीहरू (सबै) मेरा शत्रु हुन्, सिवाय विश्वब्रह्माण्डका ती प्रतिपालक,

الَّذِي خَلَقَنِي فَهُوَ يَهْدِينِ ﴿٧٨﴾

७९. जसले मलाई सृष्टि गरे, तथा उनी नै ती हुन् जसले मलाई मार्ग देखाउँछन्,

وَالَّذِي هُوَ يُطْعِمُنِي وَيَسْقِينِ ﴿٧٩﴾

८०. "तथा उनी नै मलाई खुवाउँछन्, तथा मलाई पेय पदार्थ (पानी) उपलब्ध गराउँछन्;

وَإِذَا مَرِضْتُ فَهُوَ يَشْفِينِ ﴿٨٠﴾

८१. तथा जब म विमारी हुन्छु, ती उनी नै हुन् जसले मलाई पुनः स्वास्थ्य प्रदान गर्छन्,

وَالَّذِي يُمِيتُنِي ثُمَّ يُحْيِينِ ﴿٨١﴾

८२. तथा उनले नै मलाई मृत्यु प्रदान गर्नेछन्, तथा त्यसपछि (पुनः) मलाई जीवित गर्नेछन्,

وَالَّذِي أَطْمَعُ أَن يَغْفِرَ لِي خَطِيئَتِي يَوْمَ الدِّينِ ﴿٨٢﴾

८३. तथा मेरो आशा छ उनले नै मेरा भूल त्रुटिहरूप्रति मलाई निर्णयका दिन क्षमा गरिदिने छन् ।

رَبِّ هَبْ لِي حُكْمًا وَأَلْحِقْنِي بِالصَّالِحِينَ ﴿٨٣﴾

८४. हे मेरा प्रतिपालक, मलाई तत्वज्ञान प्रदान गर तथा मलाई सत्यनिष्ठ

व्यक्तिहरूमा सामेल गर,

وَاجْعَلْ لِّيْ لِسَانَ صِدْقٍ فِي الْاٰخِرِيْنَ ﴿٨٤﴾

८४. तथा भावी सन्तानका बीचमा मलाई सत्य प्रतिष्ठा प्रदान गर,

وَاجْعَلْنِيْ مِنْ وَّرَثَةِ جَنَّةِ النَّعِيْمِ ﴿٨٥﴾

८५. "तथा मलाई वैभवपूर्ण उद्यानका उत्तराधिकारी-हरूमध्ये -एक उत्तराधिकारी) बनाउ,

وَ اغْفِرْ لِاَبِيْٓ اِنَّهٗ كَانَ مِنَ الضَّآلِّيْنَ ﴿٨٦﴾

८६. तथा मेरा पितालाई क्षमाप्रदान गर, किनभने उनी पथभ्रष्ट व्यक्तिहरूमध्ये रहेका छन्,

وَلَا تُخْزِنِيْ يَوْمَ يُبْعَثُوْنَ ﴿٨٧﴾

८७. तथा जब तिनीहरूलाई उठाइनेछ, त्यसदिन मलाई अपमानित नतुल्याउ,

يَوْمَ لَا يَنْفَعُ مَالٌ وَّلَا بَنُوْنَ ﴿٨٨﴾

८८. त्यसदिन जब सम्पत्ति र सन्तान काम लाग्ने छैनन्,

اِلَّا مَنْ اَتَى اللّٰهَ بِقَلْبٍ سَلِيْمٍ ﴿٨٩﴾

८९. परन्तु (केवल) त्यस व्यक्तिलाई (बचाइनेछ) जो अल्लाहसमक्ष एउटा आज्ञाकारी आत्माका साथ आउनेछ।"

وَاُزْلِفَتِ الْجَنَّةُ لِلْمُتَّقِيْنَ ﴿٩٠﴾

९०. तथा स्वर्गलाई धर्मनिष्ठ व्यक्तिहरूका निकट ल्याइनेछ।

وَبُرِّزَتِ الْجَحِيْمُ لِلْغٰوِيْنَ ﴿٩١﴾

९१. तथा पथभ्रष्ट भएका व्यक्तिहरूका निम्ति नर्कलाई पूर्णरूपले प्रकट गरिनेछ।

وَقِيْلَ لَهُمْ اَيْنَمَا كُنْتُمْ تَعْبُدُوْنَ ﴿٩٢﴾

९२. तथा तिनीहरूलाई के भनिनेछ भने, "जसको तिमीहरू उपासना गर्थ्यौ तिनीहरू कहाँ छन्

مِنْ دُوْنِ اللّٰهِ ؕ هَلْ يَنْصُرُوْنَكُمْ اَوْ يَنْتَصِرُوْنَ ﴿٩٣﴾

९३. अल्लाहबाहेक? के तिनीहरूले तिमीहरूलाई सहयोग गर्न सक्छन् अथवा (स्वयम्को) सहयोग गर्न सक्छन्?"

فَكُبْكِبُوْا فِيْهَا هُمْ وَالْغَاوٗنَ ﴿٩٤﴾

९४. त्यसपश्चात् तिनीहरू तथा पथभ्रष्ट भएका व्यक्तिहरूलाई उँधोमुन्टो पारी त्यहाँ

हालिनेछ,

وَجُنُوْدُ اِبْلِيْسَ اَجْمَعُوْنَ ۝٩٥

९६. तथा इब्लिस (सैतान) का ती सबै लस्करहरूलाई (पनि)।

قَالُوْا وَهُمْ فِيْهَا يَخْتَصِمُوْنَ ۝٩٦

९७. तिनीहरूले त्यहाँ परस्पर विवाद गर्दै भन्नेछन्,

تَاللّٰهِ اِنْ كُنَّا لَفِيْ ضَلٰلٍ مُّبِيْنٍ ۝٩٧

९८. "अल्लाहको शपथ, हामी ता स्पष्टरूपमा पथभ्रष्ट भएका थियौं,

اِذْ نُسَوِّيْكُمْ بِرَبِّ الْعٰلَمِيْنَ ۝٩٨

९९. किनभने हामीले तिमीहरूलाई विश्व-ब्रह्माण्डका प्रतिपालकतुल्य (स्थान) दिएका थियौं,

وَمَآ اَضَلَّنَآ اِلَّا الْمُجْرِمُوْنَ ۝٩٩

१००.. तथा अपराधी व्यक्तिहरूले नै हामीलाई पथभ्रष्ट गरेका थिए।

فَمَا لَنَا مِنْ شَافِعِيْنَ ۝١٠٠

१०१. तथा आज हामीहरूका निम्ति सिफारिसकर्ता कोही छैन,

وَلَا صَدِيْقٍ حَمِيْمٍ ۝١٠١

१०२. न त कोही स्नेहशील मित्र नै रहेको छ।

فَلَوْ اَنَّ لَنَا كَرَّةً فَنَكُوْنَ مِنَ الْمُؤْمِنِيْنَ ۝١٠٢

१०३. (पृथ्वीतर्फ) फर्केर जान हाम्रा निम्ति सम्भव रहेको भए हामी अवश्य विश्वासीहरूमा सामेल हुने थियौं।"

اِنَّ فِيْ ذٰلِكَ لَاٰيَةً ۚ وَمَا كَانَ اَكْثَرُهُمْ مُّؤْمِنِيْنَ ۝١٠٣

१०४. यस (घटना) मा वस्तुतः एउटा चिह्न रहेको छ, परन्तु तिनीहरूमध्ये अधिकतर व्यक्तिहरूले विश्वास गर्दैनन्।

وَاِنَّ رَبَّكَ لَهُوَ الْعَزِيْزُ الرَّحِيْمُ ۝١٠٤

१०५. तथा तिम्रा प्रतिपालक नै वास्तवमा परम पराक्रमी, परम करुणाशील छन्।

كَذَّبَتْ قَوْمُ نُوْحِ ِۨالْمُرْسَلِيْنَ ۝١٠٥

१०६. नूहका मानिसहरूले सन्देशवाहकहरू प्रति मिथ्यावादीहरूसरह व्यवहार गरे।

اِذْ قَالَ لَهُمْ اَخُوْهُمْ نُوْحٌ اَلَا تَتَّقُوْنَ ۝١٠٦

१०७. जब तिनीहरूका भाइ नूहले

तिनीहरूलाई भनेका थिए, "के तिमीहरू धर्मनिष्ठ बन्दैनौ?

إِنِّي لَكُمْ رَسُولٌ أَمِينٌ ﴿١٠٨﴾

१०८. "म तिमीहरूका निम्ति निश्चयपूर्वक (आफ्नो) अमानतप्रति विश्वस्त सन्देशवाहक हुँ।"

فَاتَّقُوا اللَّهَ وَأَطِيعُونِ ﴿١٠٩﴾

१०९. "अतः अल्लाहसित डराऊ, तथा मेरो अनुसरण गर।

وَمَا أَسْأَلُكُمْ عَلَيْهِ مِنْ أَجْرٍ إِنْ أَجْرِيَ إِلَّا عَلَىٰ رَبِّ الْعَالَمِينَ ﴿١١٠﴾

११०. "तथा यस कार्यका निम्ति म तिमीहरूसित कुनै पारितोषिक माग्दिन। मेरो पारितोषिक त विश्व-ब्रह्माण्डका प्रतिपालककै जिम्मा रहेको छ।

فَاتَّقُوا اللَّهَ وَأَطِيعُونِ ﴿١١١﴾

१११. अतः अल्लाहसित डराऊ, तथा मेरो अनुसरण गर।"

قَالُوا أَنُؤْمِنُ لَكَ وَاتَّبَعَكَ الْأَرْذَلُونَ ﴿١١٢﴾

११२. तिनीहरूले भने, "के हामी तिमीलाई विश्वास गरौं, वस्तुतः तुच्छ व्यक्तिहरू नै तिम्रा अनुयायी रहेका छन्?"

قَالَ وَمَا عِلْمِي بِمَا كَانُوا يَعْمَلُونَ ﴿١١٣﴾

११३. उनले भने,"तिनीहरूका कार्यहरूबारे मलाई कसरी जानकारी मिल्न सक्छ र?"

إِنْ حِسَابُهُمْ إِلَّا عَلَىٰ رَبِّي لَوْ تَشْعُرُونَ ﴿١١٤﴾

११४. "यदि तिमीहरू जान्दछौ भने तिनीहरूको हिसाब ता मेरा प्रतिपालककै जिम्मा रहेको छ।

وَمَا أَنَا بِطَارِدِ الْمُؤْمِنِينَ ﴿١١٥﴾

११५. तथा विश्वासीजनलाई मैले तिरस्कार गरी निकाल्नेछैन।

إِنْ أَنَا إِلَّا نَذِيرٌ مُبِينٌ ﴿١١٦﴾

११६. "म ता केवल एउटा स्पष्ट रूपमा सतर्क गर्ने व्यक्ति हुँ।"

قَالُوا لَئِنْ لَمْ تَنْتَهِ يَا نُوحُ لَتَكُونَنَّ مِنَ الْمَرْجُومِينَ ﴿١١٧﴾

११७. तिनीहरूले भने, "ऐ नूह, यदि तिमी पछि हटेनौ भने तिमी ती व्यक्तिहरूमा सामेल हुनेछौ जसलाई ढुङ्गा हानी संहार

गरिन्छ ।"

قَالَ رَبِّ إِنَّ قَوْمِي كَذَّبُونِ ﴿١١٨﴾

११८. उनले भने, "हे मेरा प्रतिपालक, मेरा जाति -का मानिसहरू) ले मसित मिथ्यावादी व्यक्तिसरह व्यवहार गरेका छन् ।"

فَافْتَحْ بَيْنِي وَبَيْنَهُمْ فَتْحًا وَنَجِّنِي وَمَن مَّعِيَ مِنَ الْمُؤْمِنِينَ ﴿١١٩﴾

११९. "त्यसकारण म र तिनीहरूका बीचमा तिमी ठोस निर्णय गर, तथा म र मसित रहेका विश्वासीहरूको रक्षा गर ।"

فَأَنجَيْنَاهُ وَمَن مَّعَهُ فِي الْفُلْكِ الْمَشْحُونِ ﴿١٢٠﴾

१२०. अत: हामीले उनलाई र उनीसित रहेका (विश्वासी) हरूलाई एउटा भरिपूर्ण नाउमा सवार गरी बचायौं ।

ثُمَّ أَغْرَقْنَا بَعْدُ الْبَاقِينَ ﴿١٢١﴾

१२१. त्यसपछि अन्य बाँकी रहेका व्यक्तिहरूलाई हामीले डुबायौं ।

إِنَّ فِي ذَٰلِكَ لَآيَةً ۖ وَمَا كَانَ أَكْثَرُهُم مُّؤْمِنِينَ ﴿١٢٢﴾

१२२. यसमा वस्तुत: एउटा चिह्न रहेको छ, परन्तु तिनीहरूमध्ये अधिकतर व्यक्तिहरूले विश्वास गर्दैनन् ।

وَإِنَّ رَبَّكَ لَهُوَ الْعَزِيزُ الرَّحِيمُ ﴿١٢٣﴾

१२३. तथा वास्तवमा तिम्रा प्रतिपालक नै परम पराक्रमी, परम करुणाशील छन् ।

كَذَّبَتْ عَادٌ الْمُرْسَلِينَ ﴿١٢٤﴾

१२४. आद् (जातिका मानिसहरू)ले सन्देश-वाहकहरूलाई अस्वीकार गरे ।

إِذْ قَالَ لَهُمْ أَخُوهُمْ هُودٌ أَلَا تَتَّقُونَ ﴿١٢٥﴾

१२५. जब तिनीहरूका भाइ हूद्‌ले तिनीहरूलाई भनेका थिए, "के तिमीहरू धर्मनिष्ठ बन्दैनौ?

إِنِّي لَكُمْ رَسُولٌ أَمِينٌ ﴿١٢٦﴾

१२६. "म तिमीहरूका निम्ति निश्चयपूर्वक पूर्ण विश्वसनीय (धरोहररक्षक) सन्देशवाहक हुँ ।"

فَاتَّقُوا اللَّهَ وَأَطِيعُونِ ﴿١٢٧﴾

१२७. "अत: अल्लाहसित डराऊ र मेरो अनुसरण गर ।"

१२८. "तथा यस कार्यका निम्ति म तिमीहरूसित कुनै पारितोषिक मागिदन । मेरो पारितोषिक ता विश्व-ब्रह्माण्डका प्रतिपालककै जिम्मा रहेको छ ।

وَمَآ اَسْـَٔلُكُمْ عَلَيْهِ مِنْ اَجْرٍ ۚ اِنْ اَجْرِيَ اِلَّا عَلٰى رَبِّ الْعٰلَمِيْنَ ۝

१२९. के तिमीहरू मिथ्या प्रशंसा प्राप्तिका निम्ति हरेक उच्च स्थानमा स्मारकहरू बनाउने गर्छौ,

اَتَبْنُوْنَ بِكُلِّ رِيْعٍ اٰيَةً تَعْبَثُوْنَ ۝

१३०. "तथा तिमीहरू विशाल दुर्गहरू तथा कारखानाहरू निर्माण गर्छौ ताकि तिमीहरू अमर रहन सक?"

وَتَتَّخِذُوْنَ مَصَانِعَ لَعَلَّكُمْ تَخْلُدُوْنَ ۝

१३१. तथा जब तिमीहरू (कसैमाथि) हात हाल्छौ, अत्याचारीस्वरूप हात हाल्ने गर्छौ ।

وَاِذَا بَطَشْتُمْ بَطَشْتُمْ جَبَّارِيْنَ ۝

१३२. अत: तिमीहरू अल्लाहसित डराऊ र मेरो अनुसरण गर ।"

فَاتَّقُوا اللّٰهَ وَاَطِيْعُوْنِ ۝

१३३. तथा उनीसित डराऊ, जसले ती सबै वस्तुहरूद्वारा तिमीहरूको सहयोग गरेका छन्, जसलाई तिमीहरू जान्दछौ ।

وَاتَّقُوا الَّذِيْٓ اَمَدَّكُمْ بِمَا تَعْلَمُوْنَ ۝

१३४. उनले चौपायाहरू र पुत्रहरूद्वारा तिमीहरूको सहयोग गरेका छन् ।

اَمَدَّكُمْ بِاَنْعَامٍ وَّبَنِيْنَ ۝

१३५. तथा बगैंचाहरू र पानीका मूलहरू (द्वारा) ।

وَجَنّٰتٍ وَّعُيُوْنٍ ۝

१३६. वस्तुत: म तिमीहरूका निम्ति एउटा भयानक दिनको दण्डप्रति डराउँछु ।"

اِنِّيْٓ اَخَافُ عَلَيْكُمْ عَذَابَ يَوْمٍ عَظِيْمٍ ۝

१३७. तिनीहरूले भने, "चाहे तिमी (हामीलाई) उपदेश देउ अथवा नदेउ, हाम्रा निम्ति एक समान रहको छ ।

قَالُوْا سَوَآءٌ عَلَيْنَآ اَوَعَظْتَ اَمْ لَمْ تَكُنْ مِّنَ الْوٰعِظِيْنَ ۝

१३८. यो ता प्राचीन मानिसहरूको चल्दैआएको आदत हो,

اِنْ هٰذَآ اِلَّا خُلُقُ الْاَوَّلِيْنَ ۝

وَمَا نَحْنُ بِمُعَذَّبِيْنَ ۚ ﴿١٣٩﴾

१३९. तथा हामीलाई दण्ड दिइनेछैन ।"

فَكَذَّبُوْهُ فَاَهْلَكْنٰهُمْ ؕ اِنَّ فِيْ ذٰلِكَ لَاٰيَةً ؕ وَمَا كَانَ اَكْثَرُهُمْ مُّؤْمِنِيْنَ ﴿١٤٠﴾

१४०. अतः तिनीहरूले उनलाई अस्वीकार गरे, तथा हामीले तिनीहरूलाई ध्वस्त पार्‍यौं । यस (घटना) मा वस्तुतः एउटा चिह्न रहेको छ, परन्तु तिनीहरूमध्ये अधिकतर व्यक्तिहरूले विश्वास गर्दैनन् ।

وَاِنَّ رَبَّكَ لَهُوَ الْعَزِيْزُ الرَّحِيْمُ ﴿١٤١﴾

१४१. तथा तिम्रा प्रतिपालक नै वास्तवमा परम पराक्रमी, परम करुणाशील छन् ।

كَذَّبَتْ ثَمُوْدُ الْمُرْسَلِيْنَ ۚۖ ﴿١٤٢﴾

१४२. समूदका मानिसहरूले सन्देश वाहकहरूलाई अस्वीकार गरे,

اِذْ قَالَ لَهُمْ اَخُوْهُمْ صٰلِحٌ اَلَا تَتَّقُوْنَ ۚ ﴿١٤٣﴾

१४३. जब तिनीहरूका भाइ सालिह्ले तिमीहरूलाई भनेका थिए, "के तिनीहरू धर्मनिष्ठ बन्दैनौ?

اِنِّيْ لَكُمْ رَسُوْلٌ اَمِيْنٌ ۙ ﴿١٤٤﴾

१४४. म निश्चयपूर्वक तिमीहरूका निम्ति पूर्ण विश्वसनीय(धरोहररक्षक) सन्देशवाहक हुँ ।

فَاتَّقُوا اللّٰهَ وَاَطِيْعُوْنِ ۚ ﴿١٤٥﴾

१४५. अतः तिमीहरू अल्लाहसित डराऊ, र मेरो अनुसरण गर ।

وَمَاۤ اَسْـَٔلُكُمْ عَلَيْهِ مِنْ اَجْرٍ ۚ اِنْ اَجْرِيَ اِلَّا عَلٰى رَبِّ الْعٰلَمِيْنَ ؕ ﴿١٤٦﴾

१४६. तथा यस कार्यका निम्ति म तिमीहरूसित कुनै पारितोषिक माग्दिन । मेरो पारितोषिक ता केवल विश्व-ब्रह्माण्डका प्रतिपालकको जिम्मा रहेको छ

اَتُتْرَكُوْنَ فِيْ مَا هٰهُنَاۤ اٰمِنِيْنَ ۙ ﴿١٤٧﴾

१४७. के तिमीहरूलाई यहाँ (प्राप्त) वस्तुहरूका बीचमा शान्तिपूर्वक छाडिनेछ,

فِيْ جَنّٰتٍ وَّعُيُوْنٍ ۙ ﴿١٤٨﴾

१४८. बगैंचाहरू र पानीका मूलहरूका बीचमा,

وَّزُرُوْعٍ وَّنَخْلٍ طَلْعُهَا هَضِيْمٌ ۚ ﴿١٤٩﴾

१४९. तथा बालीनालीपूर्ण खेतहरू र अधिक फलको बोझले भाँचिन लागेका

खजूरका वृक्षहरूका बीचमा?

१५०. तथा तिमीहरू कौशलपूर्ण तरिकाले पहाडहरूमा भवनहरू निर्माण गर्छौ ।

وَتَنْحِتُوْنَ مِنَ الْجِبَالِ بُيُوْتًا فٰرِهِيْنَ ﴿١٥٠﴾

१५१. अत: तिमीहरू अल्लाहप्रति डराऊ र मेरो अनुसरण गर ।

فَاتَّقُوا اللّٰهَ وَاَطِيْعُوْنِ ﴿١٥١﴾

१५२. तथा ती सीमोल्लङ्घनकारीहरूको कुरा नमान,

وَلَا تُطِيْعُوْٓا اَمْرَ الْمُسْرِفِيْنَ ﴿١٥٢﴾

१५३. जसले पृथ्वीमा अशान्ति सिर्जना गर्छन् र (त्यसको) सुधार गर्दैनन् ।"

الَّذِيْنَ يُفْسِدُوْنَ فِي الْاَرْضِ وَلَا يُصْلِحُوْنَ ﴿١٥٣﴾

१५४. तिनीहरूले भने, "तिमी ता यस्ता व्यक्ति हौ जसमाथि जादु गरिएको छ,

قَالُوْٓا اِنَّمَآ اَنْتَ مِنَ الْمُسَحَّرِيْنَ ﴿١٥٤﴾

१५५. तिमी ता हामीजस्तै एकजना मानिस हौ । अत: यदि तिमी सत्यवादी हौ भने कुनै चिह्न प्रस्तुत गर ।"

مَآ اَنْتَ اِلَّا بَشَرٌ مِّثْلُنَا ۚ فَأْتِ بِاٰيَةٍ اِنْ كُنْتَ مِنَ الصّٰدِقِيْنَ ﴿١٥٥﴾

१५६. उनले भने, "यो एउटा पोथी ऊँट हो, निर्धारित दिनमा त्यसको पानी पिउने पालो रहेको छ, तथा तिमीहरूको पानी पिउने पालो (पनि) निर्धारित दिनमा रहेको छ ।

قَالَ هٰذِهٖ نَاقَةٌ لَّهَا شِرْبٌ وَّلَكُمْ شِرْبُ يَوْمٍ مَّعْلُوْمٍ ﴿١٥٦﴾

१५७. तथा त्यसको हानि गर्ने प्रचेष्टा तिमीहरू नगर अन्यथा तिमीहरूलाई एउटा भयानक दिनको दण्डले समात्नेछ ।"

وَلَا تَمَسُّوْهَا بِسُوْٓءٍ فَيَاْخُذَكُمْ عَذَابُ يَوْمٍ عَظِيْمٍ ﴿١٥٧﴾

१५८. परन्तु तिनीहरूले उसको घुँडाका पछिल्तिरका नाडीहरू काटिदिए , तथा त्यसपछि तिनीहरू लज्जित हुन पुगे ।

فَعَقَرُوْهَا فَاَصْبَحُوْا نٰدِمِيْنَ ﴿١٥٨﴾

१५९. अत: तिनीहरूलाई दण्डले समात्यो । त्यसमा वस्तुत: एउटा चिह्न रहेको छ, परन्तु तिनीहरूमध्ये अधिकतर व्यक्तिहरू

فَاَخَذَهُمُ الْعَذَابُ ؕ اِنَّ فِيْ ذٰلِكَ لَاٰيَةً ؕ وَمَا كَانَ اَكْثَرُهُمْ مُّؤْمِنِيْنَ ﴿١٥٩﴾

विश्वास गर्दैनन् ।

وَاِنَّ رَبَّكَ لَهُوَ الْعَزِيْزُ الرَّحِيْمُ ﴿١٦٠﴾

१६०. तथा तिम्रा प्रतिपालक नै वास्तवमा परम पराक्रमी, परम करुणाशील छन् ।

كَذَّبَتْ قَوْمُ لُوْطٍ الْمُرْسَلِيْنَ ﴿١٦١﴾

१६१. लूत्का (जातिका) मानिसहरूले पनि सन्देशवाहकहरूलाई अस्वीकार गरे ।

اِذْ قَالَ لَهُمْ اَخُوْهُمْ لُوْطٌ اَلَا تَتَّقُوْنَ ﴿١٦٢﴾

१६२. जब तिनीहरूका भाइ लूत्ले तिनीहरूलाई भने, "के तिमीहरू धर्मनिष्ठ बन्दैनौ?

اِنِّيْ لَكُمْ رَسُوْلٌ اَمِيْنٌ ﴿١٦٣﴾

१६३. म निश्चयपूर्वक तिमीहरूका निम्ति पूर्ण विश्वसनीय (धरोहररक्षक) सन्देशवाहक हुँ ।

فَاتَّقُوا اللّٰهَ وَاَطِيْعُوْنِ ﴿١٦٤﴾

१६४. अतः तिमीहरू अल्लाहसित डराऊ र मेरो अनुसरण गर ।

وَمَآ اَسْـَٔلُكُمْ عَلَيْهِ مِنْ اَجْرٍ ۚ اِنْ اَجْرِيَ اِلَّا عَلٰى رَبِّ الْعٰلَمِيْنَ ﴿١٦٥﴾

१६५. तथा यस कार्यका निम्ति म तिमीहरूसित कुनै पारितोषिक माग्दिन । मेरो पारितोषिक ता केवल विश्व-ब्रह्माण्डका स्वामीकै जिम्मा रहेको छ ।

اَتَاْتُوْنَ الذُّكْرَانَ مِنَ الْعٰلَمِيْنَ ﴿١٦٦﴾

१६६. के तिमीहरू सम्पूर्ण मानवजातिमा (कामवासनाका निम्ति) पुरुषहरूका निकट जान्छौ,

وَتَذَرُوْنَ مَا خَلَقَ لَكُمْ رَبُّكُمْ مِّنْ اَزْوَاجِكُمْ ۭ بَلْ اَنْتُمْ قَوْمٌ عٰدُوْنَ ﴿١٦٧﴾

१६७. तथा तिमीहरूका प्रतिपालकले तिमीहरूका निम्ति सृष्टि गरेका पत्नीहरूलाई भने छाडिदिन्छौ? होइन, (अपितु) तिमीहरू सीमोल्लङ्घनकारी व्यक्तिहरू हौ ।"

قَالُوْا لَئِنْ لَّمْ تَنْتَهِ يٰلُوْطُ لَتَكُوْنَنَّ مِنَ الْمُخْرَجِيْنَ ﴿١٦٨﴾

१६८. तिनीहरूले भने, "ऐ, लूत्, यदि तिमी पछि हटेनौ भने, तिमी अवश्य ती व्यक्तिहरूमा सामेल हुनेछौ जसलाई निर्वासित गरिन्छ ।"

قَالَ إِنِّي لِعَمَلِكُم مِّنَ الْقَالِينَ ﴿١٦٨﴾

१६९. उनले भने, "निस्सन्देह म तिमीहरूको दुराचारलाई घृणाको दृष्टिले हेर्छु ।

رَبِّ نَجِّنِي وَأَهْلِي مِمَّا يَعْمَلُونَ ﴿١٦٩﴾

१७०. हे मेरा प्रतिपालक, मलाई र मेरा परिवारलाई तिनीहरूका क्रियाकलापबाट मुक्ति देउ ।"

فَنَجَّيْنَاهُ وَأَهْلَهُ أَجْمَعِينَ ﴿١٧٠﴾

१७१. अतः हामीले उनलाई र उनका परिवारका (सबैलाई) बचायौं,

إِلَّا عَجُوزًا فِي الْغَابِرِينَ ﴿١٧١﴾

१७२. सिवाय एउटी वृद्धा महिलाबाहेक, जो पछिरहने व्यक्तिहरूमा सामेल थिइन् ।

ثُمَّ دَمَّرْنَا الْآخَرِينَ ﴿١٧٢﴾

१७३. त्यसपछि अन्य सबै व्यक्तिहरूलाई हामीले विनाश गर्‍यौं ।

وَأَمْطَرْنَا عَلَيْهِم مَّطَرًا ۖ فَسَاءَ مَطَرُ الْمُنذَرِينَ ﴿١٧٣﴾

१७४. त्यसपछि हामीले तिनीहरूमाथि एउटा वर्षा बर्सायौं, तथा सचेत गरिएका व्यक्तिहरूमाथि बर्साइने वर्षा अति नराम्रो हुन्छ ।

إِنَّ فِي ذَٰلِكَ لَآيَةً ۖ وَمَا كَانَ أَكْثَرُهُم مُّؤْمِنِينَ ﴿١٧٤﴾

१७५. त्यस (घटना) मा वस्तुतः एउटा चिह्न रहेको छ, परन्तु तिनीहरूमध्ये अधिकतर व्यक्तिहरूले विश्वास गर्दैनन् ।

وَإِنَّ رَبَّكَ لَهُوَ الْعَزِيزُ الرَّحِيمُ ﴿١٧٥﴾

१७६. तथा तिम्रा प्रतिपालक नै निश्चयपूर्वक परम पराक्रमी, परम करुणाशील छन् ।

كَذَّبَ أَصْحَابُ لْئَيْكَةِ الْمُرْسَلِينَ ﴿١٧٦﴾

१७७. बनका निवासीहरूले पनि सन्देशवाहकहरूलाई अस्वीकार गरे,

إِذْ قَالَ لَهُمْ شُعَيْبٌ أَلَا تَتَّقُونَ ﴿١٧٧﴾

१७८. जब शुऐबले तिनीहरूलाई भने, "के तिमीहरू धर्मनिष्ठ बन्दैनौ ?

إِنِّي لَكُمْ رَسُولٌ أَمِينٌ ﴿١٧٨﴾

१७९. म निश्चयपूर्वक तिमीहरूका निम्ति पूर्ण विश्वसनीय (धरोहररक्षक)

सन्देशवाहक हुँ ।

فَاتَّقُوا اللّٰهَ وَاَطِيْعُوْنِ ۝١٨٠

१८०. अतः तिमीहरू अल्लाहसित डराऊ, र मेरो अनुसरण गर,

وَمَآ اَسْـَٔلُكُمْ عَلَيْهِ مِنْ اَجْرٍ اِنْ اَجْرِيَ اِلَّا عَلٰى رَبِّ الْعٰلَمِيْنَ ۝١٨١

१८१. तथा यस कार्यका निम्ति म तिमीहरूसित कुनै पारितोषिक माग्दिन । मेरो पारितोषिक ता विश्व-ब्रह्माण्डका प्रतिपालककै जिम्मा रहेको छ ।

اَوْفُوا الْكَيْلَ وَلَا تَكُوْنُوْا مِنَ الْمُخْسِرِيْنَ ۝١٨٢

१८२. तौल पूरा गरी दिने गर, तथा घटाएर दिने व्यक्तिहरूमध्ये नबन,

وَزِنُوْا بِالْقِسْطَاسِ الْمُسْتَقِيْمِ ۝١٨٣

१८३. तथा तराजु ठीक ठीक जोख्ने गर ।

وَلَا تَبْخَسُوا النَّاسَ اَشْيَآءَهُمْ وَلَا تَعْثَوْا فِي الْاَرْضِ مُفْسِدِيْنَ ۝١٨٤

१८४. तथा मानिसहरूलाई वस्तुहरूको उचित मूल्यभन्दा घटाएर (मूल्य) दिने नगर, न त देशमा भ्रष्टाचारपूर्ण कार्यहरू गरी उपद्रव गर्दै हिँड्ने गर ।

وَاتَّقُوا الَّذِيْ خَلَقَكُمْ وَالْجِبِلَّةَ الْاَوَّلِيْنَ ۝١٨٥

१८५. तथा जसले तिमीहरूलाई र प्रारम्भका प्राणीहरूलाई सृष्टि गरे, उनीसित डराऊ ।

قَالُوْٓا اِنَّمَآ اَنْتَ مِنَ الْمُسَحَّرِيْنَ ۝١٨٦

१८६. तिनीहरूले भने, "तिमी यस्ता व्यक्ति हौ, जसमाथि जादु गरिएको छ ।

وَمَآ اَنْتَ اِلَّا بَشَرٌ مِّثْلُنَا وَاِنْ نَّظُنُّكَ لَمِنَ الْكٰذِبِيْنَ ۝١٨٧

१८७. तथा तिमी ता केवल हामीजस्तै एकजना मानिस हौ, हामी ता तिमीलाई मिथ्यावादी व्यक्ति ठान्छौं ।

فَاَسْقِطْ عَلَيْنَا كِسَفًا مِّنَ السَّمَآءِ اِنْ كُنْتَ مِنَ الصّٰدِقِيْنَ ۝١٨٨

१८८. अतः यदि तिमी सत्यवादी व्यक्ति हौ भने हामीमाथि आकाशका टुक्राहरू गिराउ ।"

قَالَ رَبِّيْٓ اَعْلَمُ بِمَا تَعْمَلُوْنَ ۝١٨٩

१८९. उनले भने, "तिमीहरूको क्रियाकलापलाई मेरा प्रतिपालकले राम्ररी जान्दछन् ।"

فَكَذَّبُوهُ فَأَخَذَهُمْ عَذَابُ يَوْمِ الظُّلَّةِ ۚ إِنَّهُ كَانَ عَذَابَ يَوْمٍ عَظِيمٍ ﴿١٩٠﴾

१९०. अतः तिनीहरूले उनलाई मिथ्यावादी ठहऱ्याए । त्यसपछि अन्धकारमय छायाँयुक्त दिनको दण्डले तिनीहरूलाई समात्यो । वास्तवमा त्यो एउटा भयानक दिनको दण्ड थियो ।

إِنَّ فِي ذَٰلِكَ لَآيَةً ۖ وَمَا كَانَ أَكْثَرُهُمْ مُؤْمِنِينَ ﴿١٩١﴾

१९१. त्यस (घटना) मा वस्तुतः एउटा चिह्न रहेको छ, परन्तु तिनीहरूमध्ये अधिकतर व्यक्तिहरूले विश्वास गरेनन् ।

وَإِنَّ رَبَّكَ لَهُوَ الْعَزِيزُ الرَّحِيمُ ﴿١٩٢﴾

१९२. तथा तिम्रा प्रतिपालक नै निश्चयपूर्वक परम पराक्रमी, परम करुणाशील छन् ।

وَإِنَّهُ لَتَنزِيلُ رَبِّ الْعَالَمِينَ ﴿١٩٣﴾

१९३. तथा यो वास्तवमा विश्व-ब्रह्माण्डका प्रतिपालकका तर्फबाट अवतीर्ण भएको (कुरान) हो ।

نَزَلَ بِهِ الرُّوحُ الْأَمِينُ ﴿١٩٤﴾

१९४. एउटा अमानत (नासो) प्रति विश्वसनीय पवित्र आत्मा(फरिस्ता) यसका साथ अवतीर्ण भएको छ ।

عَلَىٰ قَلْبِكَ لِتَكُونَ مِنَ الْمُنذِرِينَ ﴿١٩٥﴾

१९५. (अर्थात्) तिम्रो हृदयमाथि, ताकि तिमी सतर्ककारीहरूमध्येका बन,

بِلِسَانٍ عَرَبِيٍّ مُّبِينٍ ﴿١٩٦﴾

१९६. यसलाई स्पष्ट र सरल अरबी भाषामा (अवतीर्ण गरिएको छ) ।

وَإِنَّهُ لَفِي زُبُرِ الْأَوَّلِينَ ﴿١٩٧﴾

१९७. तथा निश्चय नै, पहिलाका मानिसहरूका पुस्तकहरूमा यसको (उल्लेख) रहेको छ ।

أَوَلَمْ يَكُن لَّهُمْ آيَةً أَن يَعْلَمَهُ عُلَمَاءُ بَنِي إِسْرَائِيلَ ﴿١٩٨﴾

१९८. इजरायलका सन्तानका विज्ञ व्यक्तिहरूले समेत यसलाई जान्दछन् भने, के तिनीहरूका निम्ति यो चिह्नस्वरूप रहेको छैन त ?

وَلَوْ نَزَّلْنَاهُ عَلَىٰ بَعْضِ الْأَعْجَمِينَ ﴿١٩٩﴾

१९९. तथा यदि यस (कुरान) लाई हामीले

गैर अरबी व्यक्तिमाथि अवतीर्ण गरेका भए,

فَقَرَاَهٗ عَلَيْهِمْ مَّا كَانُوْا بِهٖ مُؤْمِنِيْنَ ۝٢٠٠

२००. तथा उसले तिनीहरूसमक्ष यसको पाठ गर्ने थियो, (तब) तिनीहरूले त्यसप्रति कदापि विश्वास गर्ने थिएनन् ।

كَذٰلِكَ سَلَكْنٰهُ فِيْ قُلُوْبِ الْمُجْرِمِيْنَ ۝٢٠١

२०१. इसैप्रकार पापी व्यक्तिहरूका हृदयमा हामीले यस (अविश्वास)लाई दाखिल गरेका छौं ।

لَا يُؤْمِنُوْنَ بِهٖ حَتّٰى يَرَوُا الْعَذَابَ الْاَلِيْمَ ۝٢٠٢

२०२. ज्बसम्म तिनीहरूले वेदनादायक दण्ड देख्दैनन् यसप्रति तिनीहरूले विश्वास गर्नेछैनन् ।

فَيَاْتِيَهُمْ بَغْتَةً وَّهُمْ لَا يَشْعُرُوْنَ ۝٢٠٣

२०३. परन्तु तिनीहरूले थाहा नपाइकन, त्यो अकस्मात् तिनीहरूमाथि आइलाग्नेछ,

فَيَقُوْلُوْا هَلْ نَحْنُ مُنْظَرُوْنَ ۝٢٠٤

२०४. तथा तिनीहरूले भन्नेछन्, "के हामीलाई केही अवसर मिल्न सक्ला ?"

اَفَبِعَذَابِنَا يَسْتَعْجِلُوْنَ ۝٢٠٥

२०५. के ! यी व्यक्तिहरू हाम्रो दण्ड शीघ्र आओस् भन्ने इच्छा राख्छन् –

اَفَرَءَيْتَ اِنْ مَّتَّعْنٰهُمْ سِنِيْنَ ۝٢٠٦

२०६. तिम्रो सोचाइ के छ? यदि तिनीहरूलाई हामीले केही सालसम्म (सांसारिक सुख) भोग गर्न दिए तापनि,

ثُمَّ جَآءَهُمْ مَّا كَانُوْا يُوْعَدُوْنَ ۝٢٠٧

२०७. त्यसपछि जुन कुराबाट तिनीहरूलाई सावधान गरिएको थियो त्यो कुरा अवश्य तिनीहरूसमक्ष उपस्थित हुन्छ ।

مَآ اَغْنٰى عَنْهُمْ مَّا كَانُوْا يُمَتَّعُوْنَ ۝٢٠٨

२०८. त्यस अवस्थामा तिनीहरूलाई प्राप्त रहेको सुख-शान्तिले तिनीहरूलाई केही लाभ दिनेछैन ।

وَمَآ اَهْلَكْنَا مِنْ قَرْيَةٍ اِلَّا لَهَا مُنْذِرُوْنَ ۝٢٠٩

२०९. तथा कुनै नगरलाई त्यसतर्फ सावधानकर्ता नपठाइकन हामीले कदापि नष्ट गरेनौं ।

ذِكْرَىٰ ۛ وَمَا كُنَّا ظَٰلِمِينَ ﴿٢٠٩﴾

२१०. (यो) एउटा उपदेश (हो), तथा हामी अत्याचारी रहेका छैनौं ।

وَمَا تَنَزَّلَتْ بِهِ ٱلشَّيَٰطِينُ ﴿٢١٠﴾

२११. तथा यस (कुरान)लाई दुष्टात्माहरूले अवतीर्ण गरेका होइनन् ।

وَمَا يَنۢبَغِى لَهُمْ وَمَا يَسْتَطِيعُونَ ﴿٢١١﴾

२१२. तिनीहरू यस कार्यका योग्य हुनै सक्दैनन्, न त तिनीहरूमा त्यसो गर्ने क्षमता नै रहेको छ ।

إِنَّهُمْ عَنِ ٱلسَّمْعِ لَمَعْزُولُونَ ﴿٢١٢﴾

२१३. तिनीहरूलाई निश्चयपूर्वक सुन्न निषिद्ध गरिएको छ ।

فَلَا تَدْعُ مَعَ ٱللَّهِ إِلَٰهًا ءَاخَرَ فَتَكُونَ مِنَ ٱلْمُعَذَّبِينَ ﴿٢١٣﴾

२१४. त्यसकारण, तिमी अल्लाहलाई छाडी अन्य कसैलाई नपुकार, अन्यथा, तिमी दण्डनीय व्यक्तिहरूमा (सामेल) हुनेछौ ।

وَأَنذِرْ عَشِيرَتَكَ ٱلْأَقْرَبِينَ ﴿٢١٤﴾

२१५. त्था तिमी आफ्ना अति निकटस्थ नातेदारहरूलाई सावधान गर,

وَٱخْفِضْ جَنَاحَكَ لِمَنِ ٱتَّبَعَكَ مِنَ ٱلْمُؤْمِنِينَ ﴿٢١٥﴾

२१६. त्था तिम्रा अनुयायी विश्वासीजनका निम्ति तिमी आफ्नो (करुणाको) पखेटो झुकाउ ।

فَإِنْ عَصَوْكَ فَقُلْ إِنِّى بَرِىٓءٌ مِّمَّا تَعْمَلُونَ ﴿٢١٦﴾

२१७. त्यसपछि यदि तिनीहरूले तिम्रो आवज्ञा गरेमा, तिमी भन, "म तिमीहरूका क्रियाकलापबाट पूर्णरूपले आफ्नो सम्बन्ध विच्छेद गर्छु ।"

وَتَوَكَّلْ عَلَى ٱلْعَزِيزِ ٱلرَّحِيمِ ﴿٢١٧﴾

२१८. त्था ती परम पराक्रमी, परम करुणाशील (प्रतिपालक) माथि आफ्नो भरोसा राख,

ٱلَّذِى يَرَىٰكَ حِينَ تَقُومُ ﴿٢١٨﴾

२१९. ज्सले तिमी (प्रार्थनामा) उभिएको समयमा तिमीलाई देखिरहेका हुन्छन् ।

وَتَقَلُّبَكَ فِى ٱلسَّٰجِدِينَ ﴿٢١٩﴾

२२०. त्था (उनले) तिमीलाई (आफ्ना प्रतिपालकसमक्ष) साष्टाङ्ग दण्डवत् गर्ने व्यक्तिहरूसित यताउता गरिरहेको

(अवस्थामा पनि देख्छन्) ।

إِنَّهُۥ هُوَ ٱلسَّمِيعُ ٱلْعَلِيمُ ﴿٢٢١﴾

२२१. वस्तुतः उनी सर्वस्रोता, सर्वज्ञ छन् ।

هَلْ أُنَبِّئُكُمْ عَلَىٰ مَن تَنَزَّلُ ٱلشَّيَٰطِينُ ﴿٢٢٢﴾

२२२. दुष्टात्मा (सैतान) हरू कसमाथि अवतीर्ण हुन्छन् भन्ने कुराबारे के म तिमीहरूलाई अवगत गराउँ ?

تَنَزَّلُ عَلَىٰ كُلِّ أَفَّاكٍ أَثِيمٍ ﴿٢٢٣﴾

२२३. तिनीहरू हरेक घोर मिथ्यावादी (र) पापीमाथि अवतीर्ण हुन्छन्,

يُلْقُونَ ٱلسَّمْعَ وَأَكْثَرُهُمْ كَٰذِبُونَ ﴿٢٢٤﴾

२२४. तिनीहरूले सुनेका कुराहरूलाई बारम्बार दोहोऱ्याउँछन्, तथा तिनीहरूमध्ये अधिकतर व्यक्तिहरू मिथ्यावादी हुन्छन् ।

وَٱلشُّعَرَآءُ يَتَّبِعُهُمُ ٱلْغَاوُۥنَ ﴿٢٢٥﴾

२२५. तथा कविहरू कस्ता हुन्छन् भने, केवल पथभ्रष्ट व्यक्तिहरूले तिनीहरूको अनुसरण गर्ने गर्छन् ।

أَلَمْ تَرَ أَنَّهُمْ فِى كُلِّ وَادٍ يَهِيمُونَ ﴿٢٢٦﴾

२२६. के तिमी देख्दैनौ कसरी तिनीहरू हरेक उपत्यकामा व्याकुल घुमिरहेका हुन्छन्,

وَأَنَّهُمْ يَقُولُونَ مَا لَا يَفْعَلُونَ ﴿٢٢٧﴾

२२७. तथा तिनीहरू यस्ता कुरा गर्छन् जसको तिनीहरू स्वयम् पालना गर्दैनन् ?

إِلَّا ٱلَّذِينَ ءَامَنُوا۟ وَعَمِلُوا۟ ٱلصَّٰلِحَٰتِ وَذَكَرُوا۟ ٱللَّهَ كَثِيرًا وَٱنتَصَرُوا۟ مِنۢ بَعْدِ مَا ظُلِمُوا۟ ۗ وَسَيَعْلَمُ ٱلَّذِينَ ظَلَمُوٓا۟ أَىَّ مُنقَلَبٍ يَنقَلِبُونَ ﴿٢٢٨﴾

२२८. ती व्यक्तिहरूबाहेक, जसले विश्वास गर्छन् र पुण्यकार्य गर्छन् तथा अल्लाहलाई अत्याधिक स्मरण गर्छन् र आफूमाथि अत्याचार भएको खण्डमा (मात्रै) प्रतिशोध लिन्छन् । तथा अत्याचारी व्यक्तिहरूले कुन स्थानतर्फ तिनीहरू फर्कनेछन् भन्ने कुरा शीघ्र नै जान्नेछन् ।

سُوْرَةُ النَّمْلِ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ اَرْبَعٌ وَّتِسْعُوْنَ اٰيَةً وَّسَبْعَةُ رُكُوْعَاتٍ

## अल्-नम्ल
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ﴿١﴾

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

طٰسٓ تِلْكَ اٰيٰتُ الْقُرْاٰنِ وَ كِتَابٍ مُّبِيْنٍ ﴿٢﴾

२. ता सिन्* । यी कुरान र प्रकाशमय पुस्तकका आयातहरू हुन्,

هُدًى وَّ بُشْرٰى لِلْمُؤْمِنِيْنَ ﴿٣﴾

३. विश्वासीजनका निम्ति यी मार्गदर्शन तथा शुभसन्देशस्वरूप रहेका छन्,

الَّذِيْنَ يُقِيْمُوْنَ الصَّلٰوةَ وَ يُؤْتُوْنَ الزَّكٰوةَ وَهُمْ بِالْاٰخِرَةِ هُمْ يُوْقِنُوْنَ ﴿٤﴾

४. ती व्यक्तिहरूका (निम्ति), जसले नमाज अनुष्ठान गर्छन् तथा जगात तिर्छन्, र परलोकप्रति दृढ-विश्वास राख्छन् ।

اِنَّ الَّذِيْنَ لَا يُؤْمِنُوْنَ بِالْاٰخِرَةِ زَيَّنَّا لَهُمْ اَعْمَالَهُمْ فَهُمْ يَعْمَهُوْنَ ﴿٥﴾

५. जसले परलोकप्रति विश्वास गर्दैनन्, तिनीहरूका निम्ति भने हामीले तिनीहरूका कार्यहरू तिनका दृष्टिमा उत्कृष्ट देखाएका छौं, त्यसकारण तिनीहरू अन्धास्वरूप घुमिरहेछन् ।

اُولٰٓئِكَ الَّذِيْنَ لَهُمْ سُوْٓءُ الْعَذَابِ وَهُمْ فِي الْاٰخِرَةِ هُمُ الْاَخْسَرُوْنَ ﴿٦﴾

६. ती यस्ता व्यक्तिहरू हुन् जसलाई यातनादायक दण्ड मिल्नेछ, तथा परलोकमा तिनीहरू नै सर्वाधिक घाटाग्रस्त व्यक्तिहरू हुनेछन् ।

وَاِنَّكَ لَتُلَقَّى الْقُرْاٰنَ مِنْ لَّدُنْ حَكِيْمٍ عَلِيْمٍ ﴿٧﴾

७. वस्तुतः यो कुरान तिमीलाई परम तत्त्वज्ञ, सर्वज्ञ (अल्लाह) का जुनाफबाट प्रदान गरिएको छ ।

اِذْ قَالَ مُوْسٰى لِاَهْلِهٖٓ اِنِّيْٓ اٰنَسْتُ نَارًا ۚ سَاٰتِيْكُمْ مِّنْهَا بِخَبَرٍ اَوْ اٰتِيْكُمْ بِشِهَابٍ قَبَسٍ لَّعَلَّكُمْ تَصْطَلُوْنَ ﴿٨﴾

८. (स्मरण गर) जब मूसाले आफ्ना परिवारलाई भनेका थिए, "मैले एउटा अग्नि देखेको छु, म त्यहाँबाट तिमीहरूका निम्ति

---

* परम पवित्र, सर्वस्रोता (अल्लाह) !

केही जानकारी ल्याउनेछु, अथवा एउटा आगाको (प्रज्वलित) अगुल्टो लिएर आउनेछु ताकि तिमीहरू आफूलाई सेक ।"

९. अतः जब उनी त्यससमक्ष आए, उनलाई (एउटा ध्वनिद्वारा) बोलाइयो (र भनियो): "जो त्यस अग्निमा रहेको छ त्यसलाई मङ्गलमय तुल्याइएको छ र जो त्यसका छेउछाउमा रहेका छन् तिनीहरूलाई (पनि), तथा विश्व-ब्रह्माण्डका स्वामी, अल्लाह परम प्रशंसनीय छन् ।

فَلَمَّا جَآءَهَا نُوْدِيَ اَنْۢ بُوْرِكَ مَنْ فِي النَّارِ وَمَنْ حَوْلَهَا ۭ وَسُبْحٰنَ اللّٰهِ رَبِّ الْعٰلَمِيْنَ ⑨

१०. "ए मूसा, वस्तुतः म नै परम पराक्रमी, परम तत्त्वज्ञ अल्लाह हुँ ।

يٰمُوْسٰٓى اِنَّهٗٓ اَنَا اللّٰهُ الْعَزِيْزُ الْحَكِيْمُ ⑩

११. तथा तिमी आफ्नो लौरो (धर्तीमा) फ्याँक ।" तथा जब उनले त्यसलाई हल्लिदै गरेको देखे मानौं त्यो एउटा सर्प थियो, तब उनी डरले फर्किएर भागे र पछि फर्केर हेरेनन् ।" "ए मूसा तिमी नडराउ । वास्तवमा म (तिमीसितै) छु, मेरा जुनाफमा सन्देशवाहकहरूले डराउनु पर्दैन ।

وَاَلْقِ عَصَاكَ ۭ فَلَمَّا رَاٰهَا تَهْتَزُّ كَاَنَّهَا جَاۗنٌّ وَّلّٰى مُدْبِرًا وَّلَمْ يُعَقِّبْ ۭ يٰمُوْسٰى لَا تَخَفْ ۣ اِنِّيْ لَا يَخَافُ لَدَيَّ الْمُرْسَلُوْنَ ⑪

१२. "अतः जसले अत्याचार गर्छन् र त्यसपछि त्यसलाई छाडी पुण्यकर्म गर्छन्, (तिनीहरूका निम्ति) भने म वस्तुतः परम क्षमाशील, परम करुणाशील छु ।

اِلَّا مَنْ ظَلَمَ ثُمَّ بَدَّلَ حُسْنًۢا بَعْدَ سُوْۗءٍ فَاِنِّيْ غَفُوْرٌ رَّحِيْمٌ ⑫

१३. तथा तिमी आफ्नो हात आफ्नो वस्त्रभित्र छातीमा प्रविष्ट गर, त्यो दागरहित श्वेत भएर निस्कने छ । (त्यो) फिरौन र उसका मानिसहरूतर्फ पठाइने नौवटा चिह्नहरूमध्ये एउटा चिह्न रहेको (छ), तिनीहरू वास्तवमा आज्ञोल्लङ्घनकारी मानिसहरू रहेका छन् ।"

وَاَدْخِلْ يَدَكَ فِيْ جَيْبِكَ تَخْرُجْ بَيْضَاۗءَ مِنْ غَيْرِ سُوْۗءٍ ۣ فِيْ تِسْعِ اٰيٰتٍ اِلٰى فِرْعَوْنَ وَقَوْمِهٖ ۭ اِنَّهُمْ كَانُوْا قَوْمًا فٰسِقِيْنَ ⑬

१४. परन्तु जब हाम्रा दृष्टि प्रदानकारी चिह्नहरू तिनीहरूसमक्ष आए, तब

فَلَمَّا جَاۗءَتْهُمْ اٰيٰتُنَا مُبْصِرَةً قَالُوْا هٰذَا سِحْرٌ مُّبِيْنٌ ⑭

तिनीहरूले भने, "यो त स्पष्ट रूपमा जादु हो ।"

१५. तथा तिनीहरूले ती चिह्नहरूलाई अत्याचारपूर्वक र अहङ्कारपूर्वक अस्वीकार गरे, वस्तुतः तिनीहरूको आत्मा भने तिनीहरूप्रति विश्वस्त थियो । अतः हेर, भ्रष्टाचारपूर्ण कार्य गर्ने व्यक्तिहरूको परिणाम कस्तो (निकृष्ट) भएको थियो !

وَجَحَدُوْا بِهَا وَاسْتَيْقَنَتْهَآ اَنْفُسُهُمْ ظُلْمًا وَّعُلُوًّا ۗ فَانْظُرْ كَيْفَ كَانَ عَاقِبَةُ الْمُفْسِدِيْنَ ﴿١٤﴾

१६. तथा हामीले दाऊद र सुलेमानलाई ज्ञान प्रदान गऱ्यौं र तिनीहरूले भने, "जसले हामीलाई आफ्ना धेरैजसो विश्वासी सेवकहरूमाथि प्राधान्यता प्रदान गरेका छन् तिनै अल्लाह सम्पूर्ण प्रशंसाका स्वामी रहेका छन् ।"

وَلَقَدْ اٰتَيْنَا دَاوٗدَ وَسُلَيْمٰنَ عِلْمًا ۚ وَقَالَا الْحَمْدُ لِلّٰهِ الَّذِيْ فَضَّلَنَا عَلٰى كَثِيْرٍ مِّنْ عِبَادِهِ الْمُؤْمِنِيْنَ ﴿١٥﴾

१७. तथा सुलेमान दाऊदका उत्तराधिकारी बने । तथा उनले भने, "हे मानिसहरू हो, हामीलाई पक्षीहरूको भाषा सिकाइएको छ, तथा हामीलाई सबै प्रकारका आवश्यकीय वस्तुहरू प्रदान गरिएको छ । वस्तुतः यो स्पष्ट रूपमा (अल्लाहको) कृपा रहेको छ ।

وَوَرِثَ سُلَيْمٰنُ دَاوٗدَ وَقَالَ يٰٓاَيُّهَا النَّاسُ عُلِّمْنَا مَنْطِقَ الطَّيْرِ وَاُوْتِيْنَا مِنْ كُلِّ شَيْءٍ ۗ اِنَّ هٰذَا لَهُوَ الْفَضْلُ الْمُبِيْنُ ﴿١٦﴾

१८. तथा सुलेमानसमक्ष उनका जिन्न, मानिस र पक्षीहरूका लस्करहरूलाई एकत्रित गरियो, तथा तिनीहरूलाई (विभिन्न) श्रेणीमा विभाजन गरियो ।

وَحُشِرَ لِسُلَيْمٰنَ جُنُوْدُهٗ مِنَ الْجِنِّ وَالْاِنْسِ وَالطَّيْرِ فَهُمْ يُوْزَعُوْنَ ﴿١٧﴾

१९. अतः जब तिनीहरू अल्-नमल (भन्ने) उपत्यकामा पुगे, तब अल्-नम्ल (जाति) की एउटी महिलाले भनिन्, "ऐ नमल् (जातिका मानिसहरू) हो, आ-आफ्ना घरमा प्रवेश गर, अन्यथा सुलेमान र अज्ञानतावश उनका लस्करले तिमीहरूलाई कुल्चेलान् ।"

حَتّٰٓى اِذَآ اَتَوْا عَلٰى وَادِ النَّمْلِ ۙ قَالَتْ نَمْلَةٌ يّٰٓاَيُّهَا النَّمْلُ ادْخُلُوْا مَسٰكِنَكُمْ ۚ لَا يَحْطِمَنَّكُمْ سُلَيْمٰنُ وَجُنُوْدُهٗ ۙ وَهُمْ لَا يَشْعُرُوْنَ ﴿١٨﴾

२०. तिनको कुरो सुनेर उनले हाँस्दै भने, "हे मेरा प्रतिपालक, तिमीले मप्रति र मेरा

فَتَبَسَّمَ ضَاحِكًا مِّنْ قَوْلِهَا وَقَالَ رَبِّ اَوْزِعْنِيْٓ اَنْ اَشْكُرَ نِعْمَتَكَ الَّتِيْٓ اَنْعَمْتَ

عَلَيَّ وَعَلَىٰ وَالِدَيَّ وَأَنْ أَعْمَلَ صَالِحًا تَرْضَاهُ وَأَدْخِلْنِي بِرَحْمَتِكَ فِي عِبَادِكَ الصَّالِحِينَ ﴿١٩﴾

मातापिताप्रति गरेको कृपाको कारण तिम्रो कृतज्ञ बन्ने तथा मलाई तिम्रो प्रशन्नता अनुरूप कार्य गर्ने क्षमता प्रदान गर, तथा आफ्नो अनुग्रहद्वारा मलाई तिम्रा आफ्ना धर्मपरायण सेवकहरूमा समावेश गर ।"

وَتَفَقَّدَ الطَّيْرَ فَقَالَ مَا لِيَ لَا أَرَى الْهُدْهُدَ أَمْ كَانَ مِنَ الْغَائِبِينَ ﴿٢٠﴾

२१. तथा उनले सबै पक्षीहरूको जाँच लिएर भने, "किन म हुद्हुद्लाई देख्दिन? के त्यो अनुपस्थित रहेको छ?"

لَأُعَذِّبَنَّهُ عَذَابًا شَدِيدًا أَوْ لَأَذْبَحَنَّهُ أَوْ لَيَأْتِيَنِّي بِسُلْطَانٍ مُبِينٍ ﴿٢١﴾

२२. "यदि त्यसले (आफ्नो अनुपस्थितिको) स्पष्ट कारण मलाई नदर्शाएमा म त्यसलाई कठोर दण्ड दिनेछु अथवा त्यसलाई हत्या गरिदिनेछु ।"

فَمَكَثَ غَيْرَ بَعِيدٍ فَقَالَ أَحَطتُ بِمَا لَمْ تُحِطْ بِهِ وَجِئْتُكَ مِن سَبَإٍ بِنَبَإٍ يَقِينٍ ﴿٢٢﴾

२३. तथा उनको धेरै समय बित्नुअघि नै (हुद्हुद् उपस्थित भयो) र भन्यो, "जुन कुराको तिमीलाई ज्ञान प्राप्त छैन त्यसको मैले ज्ञान प्राप्त गरेको छु, तथा मैले स'बाबाट तिम्रो निम्ति निश्चित खबर ल्याएको छु ।

إِنِّي وَجَدتُّ امْرَأَةً تَمْلِكُهُمْ وَأُوتِيَتْ مِن كُلِّ شَيْءٍ وَلَهَا عَرْشٌ عَظِيمٌ ﴿٢٣﴾

२४. "मैले तिनीहरूमाथि एउटी महिलाले शासन गरको देखें, तथा तिनलाई सम्पूर्ण वस्तुहरू प्राप्त छन्, तथा तिनको एउटा महान सिंहासन रहेको छ ।

وَجَدتُّهَا وَقَوْمَهَا يَسْجُدُونَ لِلشَّمْسِ مِن دُونِ اللَّهِ وَزَيَّنَ لَهُمُ الشَّيْطَانُ أَعْمَالَهُمْ فَصَدَّهُمْ عَنِ السَّبِيلِ فَهُمْ لَا يَهْتَدُونَ ﴿٢٤﴾

२५. "मैले ती महिला तथा तिनका मानिसहरूलाई अल्लाहलाई छाडी सूर्यको उपासना गर्दै गरेको पाएँ, तथा सैतानले तिनीहरूका कार्यहरूलाई तिनीहरूका दृष्टिमा आकर्षक (तुल्याएर) देखाएको छ, र यस प्रकार तिनीहरूलाई सन्मार्गबाट रोकेको छ, त्यसैकारण तिनीहरू मार्गदर्शनको अनुसरण गर्दैनन्,

أَلَّا يَسْجُدُوا لِلَّهِ الَّذِي يُخْرِجُ الْخَبْءَ فِي السَّمَاوَاتِ وَالْأَرْضِ وَيَعْلَمُ مَا تُخْفُونَ وَ

२६. (तथा सैतानले तिनीहरूलाई) ती अल्लाहको उपासना नगर्न (आदेश दिएको

مَا تُعْلِنُوْنَ ﴿٢٥﴾

छ), जसले आकाशमण्डल र पृथ्वीका सम्पूर्ण गुप्त वस्तुहरूलाई प्रकाशमा ल्याउँछन्, तथा जुनकुरा तिमीहरू गुप्त राख्छौ र जुनकुरा तिमीहरू प्रकट गर्छौ, उनले ती सबैलाई जान्दछन् ।"

اَللّٰهُ لَآ اِلٰـهَ اِلَّا هُوَ رَبُّ الْعَرْشِ الْعَظِيْمِ ﴿٢٦﴾ ۩

२७. "अल्लाह उनै हुन् ! उनीबाहेक अन्य कोही उपास्य छैन, उनी नै महान सिंहासनका स्वामी हुन् ।"

قَالَ سَنَنْظُرُ اَصَدَقْتَ اَمْ كُنْتَ مِنَ الْكٰذِبِيْنَ ﴿٢٧﴾

२८. (सुलेमानले) भने, "तिमीले साँचो कुरा गरेका हौ अथवा तिमी मिथ्या बोलिरहेछौ भन्ने कुरालाई हामी हेर्नेछौं ।

اِذْهَبْ بِّكِتٰبِيْ هٰذَا فَاَلْقِهْ اِلَيْهِمْ ثُمَّ تَوَلَّ عَنْهُمْ فَانْظُرْ مَاذَا يَرْجِعُوْنَ ﴿٢٨﴾

२९. "तिमी मेरो यो पत्र लिएर जाउ, तथा तिनीहरूसमक्ष यसलाई प्रस्तुत गर, त्यसपछि तिनीहरूबाट पछि हटेर बस र तिनीहरूले के (उत्तर) फर्काउँछन् त्यसलाई हेर ।"

قَالَتْ يٰۤاَيُّهَا الْمَلَؤُا اِنِّيْۤ اُلْقِيَ اِلَيَّ كِتٰبٌ كَرِيْمٌ ﴿٢٩﴾

३०. (रानीले) भनिन्, "हे मुखियाहरू हो, मलाई एउटा आदरणीय पत्र प्राप्त भएको छ ।"

اِنَّهٗ مِنْ سُلَيْمٰنَ وَاِنَّهٗ بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ﴿٣٠﴾

३१. यो सुलेमानका तर्फबाट रहेको छ, र यो: परम कृपालु, परम दयालु अल्लाहको नाममा (प्रारम्भ गरिएको) छ,

اَلَّا تَعْلُوْا عَلَيَّ وَاْتُوْنِيْ مُسْلِمِيْنَ ﴿٣١﴾ ع

३२. मसित अहङ्कारपूर्ण व्यवहार नगर, अपितु मसमक्ष विनम्र भएर उपस्थित होऊ" (भनिएको छ) ।

قَالَتْ يٰۤاَيُّهَا الْمَلَؤُا اَفْتُوْنِيْ فِيْۤ اَمْرِيْ ۚ مَا كُنْتُ قَاطِعَةً اَمْرًا حَتّٰى تَشْهَدُوْنِ ﴿٣٢﴾

३३. तिनले भनिन्, "हे मुखियाहरू हो, मेरो यस मामिलामा मलाई परामर्श देऊ । जबसम्म तिमीहरू मसित उपस्थित रही (आफ्नो परामर्श मलाई दिँदैनौ) तबसम्म म कदापि कुनै मामिलासम्बन्धी निर्णय गर्दिन

قَالُوْا نَحْنُ أُولُوْا قُوَّةٍ وَّ أُولُوْا بَأْسٍ شَدِيْدٍ ۙ وَّ الْأَمْرُ إِلَيْكِ فَانْظُرِيْ مَاذَا تَأْمُرِيْنَ ﴿٣٣﴾

३४. तिनीहरूले उत्तर दिए, "हामी शक्तिसम्पन्न तथा युद्धवीर छौं, परन्तु तिम्रो आदेश नै सर्वोपरि रहेको छ, त्यसकारण तिमीले जे आदेश दिनु छ (त्यसबारे) आफैं सोच ।"

قَالَتْ إِنَّ الْمُلُوْكَ إِذَا دَخَلُوْا قَرْيَةً أَفْسَدُوْهَا وَ جَعَلُوْا أَعِزَّةَ أَهْلِهَا أَذِلَّةً ۚ وَكَذٰلِكَ يَفْعَلُوْنَ ﴿٣٤﴾

३५. तिनले भनिन्, "निश्चय नै, जब राजाहरू कुनै देशमा प्रवेश गर्छन्, त्यसलाई नष्ट गरेरै छाड्छन्, तथा त्यहाँका प्रतिष्ठावान व्यक्तिहरूलाई निकृष्ट तुल्याएर छाड्छन् । तथा तिनीहरूले त्यसै गर्नेछन् ।

وَ إِنِّيْ مُرْسِلَةٌ إِلَيْهِمْ بِهَدِيَّةٍ فَنٰظِرَةٌ بِمَ يَرْجِعُ الْمُرْسَلُوْنَ ﴿٣٥﴾

३६. परन्तु म तिनीहरूलाई एउटा उपहार पठाइरहेछु तथा (मेरा) दूतहरूले के (उत्तर) लिएर आउने हुन् त्यसको प्रतीक्षा गर्नु छ ।"

فَلَمَّا جَاءَ سُلَيْمٰنَ قَالَ أَتُمِدُّوْنَنِ بِمَالٍ فَمَا اٰتٰىنِيَ اللّٰهُ خَيْرٌ مِّمَّا اٰتٰىكُمْ ۚ بَلْ أَنْتُمْ بِهَدِيَّتِكُمْ تَفْرَحُوْنَ ﴿٣٦﴾

३७. तथा जब (रानीका दूतहरू) सुलेमानसमक्ष आए, उनले भने, "के तिमीहरू (आफ्नो) सम्पत्तिद्वारा मेरो मद्दत गर्न चाहन्छौ? परन्तु अल्लाहले जुनकुरा मलाई प्रदान गरेका छन् त्यो कुरा तिमीहरूलाई उनले प्रदान गरेको वस्तुभन्दा अधिक उत्तम रहेको छ । होइन, अपितु तिमीहरू आफ्नो उपहारप्रति घमण्ड गरिरहेछौ ।

اِرْجِعْ إِلَيْهِمْ فَلَنَأْتِيَنَّهُمْ بِجُنُوْدٍ لَّا قِبَلَ لَهُمْ بِهَا وَ لَنُخْرِجَنَّهُمْ مِّنْهَا أَذِلَّةً وَّهُمْ صٰغِرُوْنَ ﴿٣٧﴾

३८. "तिमी तिनीहरूतर्फ जाऊ, हामी अवश्य तिनीहरूसमक्ष यस्ता लस्कर (सेना) का साथ आउनेछौं जसका विरुद्ध तिनीहरूमा (लड्ने) क्षमता रहनेछैन, तथा त्यहाँबाट तिनीहरूलाई हामी अपमानित गरी निकाल्नेछौं, तथा तिनीहरू लज्जित हुनेछन् ।"

قَالَ يٰۤاَيُّهَا الْمَلَؤُا اَيُّكُمْ يَاْتِيْنِيْ بِعَرْشِهَا قَبْلَ اَنْ يَّاْتُوْنِيْ مُسْلِمِيْنَ ۝٣٨

३९. उनले भने, "हे भलाद्मीहरू हो, तिनीहरूले आत्मसमर्पण गरी मसमक्ष आउनुअघि नै तिमीहरूमध्ये कसले उसको सिंहासन मेरा सामुन्ने प्रस्तुत गर्नेछ *?"

قَالَ عِفْرِيْتٌ مِّنَ الْجِنِّ اَنَا اٰتِيْكَ بِهٖ قَبْلَ اَنْ تَقُوْمَ مِنْ مَّقَامِكَ ۚ وَاِنِّيْ عَلَيْهِ لَقَوِيٌّ اَمِيْنٌ ۝٣٩

४०. एउटा साहसी जिन्नले भन्यो, "तिमी आफ्नो स्थानबाट उठ्नुअघि नै म त्यसलाई तिमीसमक्ष प्रस्तुत गर्नेछु, तथा म त्यसको क्षमता राख्छु -तथा म) विश्वसनीय (पनि) छु।"

---

* टिप्पणीः सुलेमानले खास तिनकै सिंहासनको उल्लेख गरेका होइनन् भन्ने कुरा निम्न आयातहरूबाट स्पष्ट हुन्छ। या त तिनको सिंहासनसित अति मिल्दो एउटा सिंहासन निर्माण गरियोस् अथवा तिनको सिंहासनको उत्तम प्रतिचित्र उनीसमक्ष प्रस्तुत गरियोस् भन्ने उनको (भनाइको) तात्पर्य हो। सुलेमानको दरबारमा प्रवेश गर्न लाग्दा सुलेमानको अधीनमा तिनले आफ्नै सिंहासनसदृश एउटा सिंहासन देखेर आश्चर्य प्रकट गरिन्। यसपछिका आयातहरूमा जुन दृश्य प्रकट हुन्छ त्यसले स्पष्टरूपमा के सङ्केत गर्छ भने, उनका दरबारका सभासद्हरूमध्ये हरेकले उनका निम्ति त्यस कार्यको जिम्मेवारी लिन चाहन्थ्यो, हरेकले आफ्नो प्रतिद्वन्द्वीभन्दा शीघ्र तथा उत्तमरूपमा त्यो कार्य समापन गर्ने अहङ्कार देखाउँथ्यो। अन्तमा, जब उनीसमक्ष सर्वप्रथम त्यो प्रतिचित्र प्रस्तुत गरियो, त्यसका निम्ति उनले अल्लाहको प्रशंसा गरे तथा त्यसको थप सुधार गर्न परामर्श दिए ताकि त्यो स'बाकी रानीको सिंहासनसित पूर्णतयाः मिलोस् तथा तिनको विलक्षण (अद्वितीय) सिँहासनको स्वामित्वको अहङ्कार मेटियोस्। उक्त 'नक्किरो लहा अर्शहा' ( نَكِّرُوْا لَهَا عَرْشَهَا ) अभिव्यक्तिले यस अर्थको पूर्ण समर्थन गर्छ, तथा के इङ्गित गर्छ भने, यदि हामीले तिनलाई तिनको सिंहासनसित मिल्दो सिंहासन देखाएका भए तिनले स्वयमेव तिनको आफ्नो सिंहासन आफूले सोचेअनुसारको विलक्षण तथा विशेष रहेनछ भन्ने अनुभव गर्ने थिइन्। अतः नक्किरो ( نَكِّرُوْا ) को अर्थ उक्त रचनामा तिनको सिँहासनलाई साधारण देखिनेयोग्य बनाउनु हुनेछ। जब तिनले सुलेमानका कारीगरहरूद्वारा निर्मित सिंहासनलाई वास्तवमै देखिन तिनको प्रतिक्रिया त्यस रानीको जस्तो थिएन जसलाई आफ्नो चोरिएको सिँहासन तत्क्षण प्राप्त भएको थियो, न त त्यस रानीको जस्तो थियो जसले स्वयम् आफ्नो सिँहासनलाई ती कारीगरहरूले चिन्न नसकिने पार्न त्यसमाथि बुट्टाहरू हानेका हुनाले चिन्नै सकिन। तिनको प्रतिक्रिया ता केवल त्यस व्यक्तिको जस्तो रहेको छ जसले आफ्नो जस्तै कुनै वस्तु देख्छ। हामीले लिएको दृश्य नै अधिक वास्तविक रहेको छ भन्ने कुरो यसैबाट प्रमाणित हुन्छ।

قَالَ الَّذِيْ عِنْدَهٗ عِلْمٌ مِّنَ الْكِتٰبِ اَنَا اٰتِيْكَ بِهٖ قَبْلَ اَنْ يَّرْتَدَّ اِلَيْكَ طَرْفُكَ ۚ فَلَمَّا رَاٰهُ مُسْتَقِرًّا عِنْدَهٗ قَالَ هٰذَا مِنْ فَضْلِ رَبِّيْ ۖ لِيَبْلُوَنِيْٓ ءَاَشْكُرُ اَمْ اَكْفُرُ ۚ وَمَنْ شَكَرَ فَاِنَّمَا يَشْكُرُ لِنَفْسِهٖ ۚ وَمَنْ كَفَرَ فَاِنَّ رَبِّيْ غَنِيٌّ كَرِيْمٌ ﴿٤١﴾

४१. पुस्तकको ज्ञानप्राप्त एउटा व्यक्तिले भन्यो, “तिम्रो आँखो झम्कनुभन्दा पनि शीघ्र म त्यसलाई तिमीसमक्ष प्रस्तुत गर्नेछु ।” तथा जब उनले त्यसलाई आफूअगाडि (राखेको) देखे तब उनले भने, “यो ता मेरा प्रतिपालकको अनुग्रहद्वारा भएको हो, ताकि म कृतज्ञ छु अथवा अकृतज्ञ छु भनी उनले मलाई जाँच्न सकून् । तथा जो कृतज्ञ बन्छ त्यो व्यक्ति -आफ्नै) आत्माको मङ्गलसाधनका निम्ति नै कृतज्ञ बन्छ, परन्तु जुन व्यक्ति अकृतज्ञ रहेको छ, वास्तवमा मेरा प्रतिपालक पूर्ण आत्मनिर्भर, परम दानी रहेका छन् ।”

قَالَ نَكِّرُوْا لَهَا عَرْشَهَا نَنْظُرْ اَتَهْتَدِيْٓ اَمْ تَكُوْنُ مِنَ الَّذِيْنَ لَا يَهْتَدُوْنَ ﴿٤٢﴾

४२. उनले भने, “तिनलाई तिनको सिंहासन साधारण स्थानतुल्य बनाएर देखाऊ, ताकि तिनले (रानीले) सन्मार्गको अनुसरण गर्ने छिन् अथवा तिनी ती सन्मार्गको अनुसरण नगर्ने व्यक्तिहरूमध्येकै बन्ने छिन् भन्ने कुरा हामी हेरौं ।”

فَلَمَّا جَآءَتْ قِيْلَ اَهٰكَذَا عَرْشُكِ ۖ قَالَتْ كَاَنَّهٗ هُوَ ۚ وَاُوْتِيْنَا الْعِلْمَ مِنْ قَبْلِهَا وَكُنَّا مُسْلِمِيْنَ ﴿٤٣﴾

४३. तथा जब ती (रानी) आइन्, तिनलाई भनियो, “के तिम्रो सिंहासन यस्तै छ? उनले उत्तर दिँदै भनिन्, “यो त ठिक्क त्यस्तै देखिन्छ । तथा यसअघि नै हामीलाई ज्ञान प्राप्त भइसकेको छ, तथा हामीले आत्मसमर्पण (आज्ञापालन) गरिसकेका छौं ।”

وَصَدَّهَا مَا كَانَتْ تَّعْبُدُ مِنْ دُوْنِ اللّٰهِ ۖ اِنَّهَا كَانَتْ مِنْ قَوْمٍ كٰفِرِيْنَ ﴿٤٣﴾

४४. तथा अल्लाहलाई छाडी जसको उनी उपासना गर्ने गर्थिन् (विश्वास स्थापनापश्चात्) उनलाई त्यसबाट रोकियो, किनभने उनी एउटा अविश्वासी जातिकी (महिला) थिइन् ।

قِيْلَ لَهَا ادْخُلِي الصَّرْحَ ۚ فَلَمَّا رَاَتْهُ حَسِبَتْهُ لُجَّةً وَّكَشَفَتْ عَنْ سَاقَيْهَا ۚ

४५. उनलाई के भनियो भने, “त्यस महलमा प्रवेश गर ।” तथा जब उनले

قَالَ إِنَّهُ صَرْحٌ مُّمَرَّدٌ مِّنْ قَوَارِيرَ ۗ قَالَتْ رَبِّ إِنِّي ظَلَمْتُ نَفْسِي وَأَسْلَمْتُ مَعَ سُلَيْمَانَ لِلَّهِ رَبِّ الْعَالَمِينَ ﴿٤٤﴾

त्यसलाई देखिन्, त्यसलाई तिनले गहिरो जलस्रोत ठानिन् र तिनले आफ्ना पाँसुला निर्वस्त्र गरिन् । (सुलेमानले) भने, "यो ता शीशाका टुक्डा जडान (गरेर तयार) गरिएको एउटा महल हो ।*" तिनले भनिन्, "हे मेरा प्रतिपालक, मैले आफ्नै आत्मामाथि अत्याचार गरेकी छु, तथा म सुलेमानसितै विश्व-ब्रह्माण्डका स्वामी, अल्लाहकी आज्ञाकारी बन्छु ।"

وَلَقَدْ أَرْسَلْنَا إِلَىٰ ثَمُودَ أَخَاهُمْ صَالِحًا أَنِ اعْبُدُوا اللَّهَ فَإِذَا هُمْ فَرِيقَانِ يَخْتَصِمُونَ ﴿٤٥﴾

४६. तथा हामीले समूद् (जाति) तर्फ तिनीहरूका भाइ सालिह्लाई पठायौं, (उनले भने), "अल्लाहको उपासना गर ।" परन्तु सुन, तिनीहरू ता परस्पर झगडा गर्ने दुई समूहमा विभाजित भए ।

قَالَ يَا قَوْمِ لِمَ تَسْتَعْجِلُونَ بِالسَّيِّئَةِ قَبْلَ الْحَسَنَةِ ۖ لَوْلَا تَسْتَغْفِرُونَ اللَّهَ لَعَلَّكُمْ تُرْحَمُونَ ﴿٤٦﴾

४७. उनले भने, "ए मेरा मानिसहरू हो, तिमीहरू मङ्गलको स्थानमा अमङ्गल शीघ्र आओस् भन्ने कामना किन गर्छौं: किन तिमीहरू अल्लाहसित क्षमायाचना गर्दैनौ ताकि तिमीहरूमाथि दया गरियोस्?"

قَالُوا اطَّيَّرْنَا بِكَ وَبِمَن مَّعَكَ ۚ قَالَ طَائِرُكُمْ عِندَ اللَّهِ ۖ بَلْ أَنتُمْ قَوْمٌ تُفْتَنُونَ ﴿٤٧﴾

४८. तिनीहरूले भने, "हामी ता तिमीलाई र तिमीसित रहेका व्यक्तिहरूलाई अलच्छिना ठान्छौं ।" उनले भने, "तिमीहरूको दुर्भाग्य (को कारण) ता अल्लाहसित रहेको छ । होइन, अपितु तिमीहरू यस्ता मानिसहरू हौ, जसको परीक्षा लिइँदै छ ।"

* स्वच्छ, उच्चस्तरीय, राम्ररी मिलाएर, दक्षतापूर्वक बिछाएको शीशाले पानीको छाप (प्रभाव) मनमा उत्पन्न गर्न सक्छ; तथा त्यही नै वास्तवमा भएको पनि थियो ; ती तीक्ष्णबुद्धि भएकी रानीलाई दिइएको सन्देश के थियो भने, कहिलेकाहीं केही वस्तुहरू तिनीहरूले सृष्टि गरेको छाप (प्रभाव) भन्दा पूर्णतया: भिन्न हुन्छन्, तथा तिनीहरूले प्रतिविम्बित गरेका गुणहरू वस्तुत: तिनीहरूका हुँदैनन् । जस्तै, सूर्यद्वारा उत्पन्न भएको प्रताप र शक्तिको छाप (प्रभाव) वस्तुत: त्यसको होइन अपितु त्यसका सृष्टिकर्ता को हो ।

وَ كَانَ فِي الْمَدِيْنَةِ تِسْعَةُ رَهْطٍ يُّفْسِدُوْنَ فِي الْاَرْضِ وَلَا يُصْلِحُوْنَ ﴿٤٩﴾

४९. त्यस नगरमा नौजना यस्ता (व्यक्तिहरू) को समूह थियो जसले देशमा अशान्ति सिर्जना गर्ने गर्थे, तथा तिनीहरू सुधार गर्दैनथे ।

قَالُوْا تَقَاسَمُوْا بِاللّٰهِ لَنُبَيِّتَنَّهٗ وَاَهْلَهٗ ثُمَّ لَنَقُوْلَنَّ لِوَلِيِّهٖ مَا شَهِدْنَا مَهْلِكَ اَهْلِهٖ وَاِنَّا لَصٰدِقُوْنَ ﴿٥٠﴾

५०. तिनीहरूले भने, "हामी अवश्य उसमाथि र उसका परिवारमाथि रात्रिसमयमा आक्रमण गर्नेछौं, तथा हामी उसका उत्तराधिकारीलाई "हामीले उसका परिवार हताहत भएको देखेनौं, तथा हामी निश्चयपूर्वक सत्य बोलिरहेछौं भनी भन्नेछौं" भनेर तिमीहरू परस्पर एकआपसमा अल्लाहको शपथ खाऊ ।

وَمَكَرُوْا مَكْرًا وَّ مَكَرْنَا مَكْرًا وَّ هُمْ لَا يَشْعُرُوْنَ ﴿٥١﴾

५१. तथा तिनीहरूले एउटा योजना बनाए, तथा हामीले पनि (त्यस विपरीत) एउटा योजना बनायौं, परन्तु तिनीहरू त्यस (कुरा)लाई जान्दैनथे ।

فَانْظُرْ كَيْفَ كَانَ عَاقِبَةُ مَكْرِهِمْ ۙ اَنَّا دَمَّرْنٰهُمْ وَقَوْمَهُمْ اَجْمَعِيْنَ ﴿٥٢﴾

५२. अतः हेर तिनीहरूको योजनाको परिणाम कति निकृष्ट हुन गयो । वस्तुतः हामीले तिनीहरूलाई र तिनीहरूका मानिसहरूलाई पूर्णरूपमा विनाश गऱ्यौं ।

فَتِلْكَ بُيُوْتُهُمْ خَاوِيَةًۢ بِمَا ظَلَمُوْا ؕ اِنَّ فِيْ ذٰلِكَ لَاٰيَةً لِّقَوْمٍ يَّعْلَمُوْنَ ﴿٥٣﴾

५३. तथा त्यहाँ तिनीहरूका खालि घरहरू (ध्वस्त अवस्थामा) रहेका छन्, जुन तिनीहरूको अत्याचारका कारण -त्यस्ता भएका हुन्) । वस्तुतः यसमा ज्ञानवान व्यक्तिहरूका निम्ति एउटा चिह्न रहेको छ ।

وَ اَنْجَيْنَا الَّذِيْنَ اٰمَنُوْا وَ كَانُوْا يَتَّقُوْنَ ﴿٥٤﴾

५४. तथा जसले विश्वास गरे र प्रतिपालकको डर मनमा धारण गरे,

तिनीहरूलाई हामीले बचायौं ।

५५. तथा लूतलाई (स्मरण गर), जब उनले आफ्ना (जातिका) मानिसहरूलाई भने, "के तिमीहरू घृणित कार्य (त्यसको अनिष्टतालाई) देखी देखी (पनि) गर्छौ?"

وَ لُوْطًا اِذْ قَالَ لِقَوْمِهٖٓ اَتَاْتُوْنَ الْفَاحِشَةَ وَاَنْتُمْ تُبْصِرُوْنَ ﴿٥٥﴾

५६. "के ! तिमीहरू महिलाहरूलाई छाडी कामवासनामा लिप्त भएर पुरुषहरूसमक्ष जाने गर्छौ? होइन, (अपितु) तिमीहरू वास्तवमै परिणामप्रति ध्यान नदिने मानिसहरू हौ ।"

اَئِنَّكُمْ لَتَاْتُوْنَ الرِّجَالَ شَهْوَةً مِّنْ دُوْنِ النِّسَآءِ ؕ بَلْ اَنْتُمْ قَوْمٌ تَجْهَلُوْنَ ﴿٥٦﴾

५७. परन्तु उनका जाति (मानिसहरू) को प्रतिक्रिया केवल के थियो भने, तिनीहरूले (मानिसहरूलाई उक्साएर) भने, "लूतका अनुयायीहरूलाई तिमीहरू आफ्नो नगरबाट निकाल । तिनीहरू वस्तुतः यस्ता मानिसहरू हुन्, जो (आफूलाई) (खुबै) पवित्र ठान्छन् ।"

فَمَا كَانَ جَوَابَ قَوْمِهٖٓ اِلَّآ اَنْ قَالُوْٓا اَخْرِجُوْٓا اٰلَ لُوْطٍ مِّنْ قَرْيَتِكُمْ ۚ اِنَّهُمْ اُنَاسٌ يَّتَطَهَّرُوْنَ ﴿٥٧﴾

५८. अतः उनकी पत्नीबाहेक हामीले उनलाई र उनका परिवारलाई बचायौं, हामीले तिनलाई पछि रहने मानिसहरूमा गणना गरिसकेका थियौं ।

فَاَنْجَيْنٰهُ وَاَهْلَهٗٓ اِلَّا امْرَاَتَهٗ ؗ قَدَّرْنٰهَا مِنَ الْغٰبِرِيْنَ ﴿٥٨﴾

५९. तथा हामीले तिनीहरूमाथि एउटा वर्षा बर्सायौं, तथा सावधान गरिएका मानिसहरूका निम्ति बर्सेको त्यो वर्षा अति नै निकृष्ट थियो ।

وَاَمْطَرْنَا عَلَيْهِمْ مَّطَرًا ۚ فَسَآءَ مَطَرُ الْمُنْذَرِيْنَ ﴿٥٩﴾

६०. तिमी भन, "सम्पूर्ण प्रशंसाका योग्य अल्लाह नै रहेका छन्, तथा उनले निर्वाचित गरेका उनका सेवकहरूमाथि सदासर्वदा शान्ति वर्षण हुन्छ । अतः के अल्लाह उत्तम छन् अथवा त्यो (वस्तु) जसलाई तिनीहरू उनको) भागीदार बनाउँछन्?"

قُلِ الْحَمْدُ لِلّٰهِ وَسَلٰمٌ عَلٰى عِبَادِهِ الَّذِيْنَ اصْطَفٰى ؕ آٰللّٰهُ خَيْرٌ اَمَّا يُشْرِكُوْنَ ﴿٦٠﴾

أَمَّنْ خَلَقَ السَّمٰوٰتِ وَالْأَرْضَ وَأَنْزَلَ لَكُمْ مِّنَ السَّمَآءِ مَآءً فَأَنْۢبَتْنَا بِهٖ حَدَآئِقَ ذَاتَ بَهْجَةٍ مَا كَانَ لَكُمْ أَنْ تُنْۢبِتُوْا شَجَرَهَا ءَاِلٰهٌ مَّعَ اللّٰهِ بَلْ هُمْ قَوْمٌ يَّعْدِلُوْنَ ﴿٦١﴾

६१. अथवा, कसले आकाशमण्डल र पृथ्वीको सिर्जना गरे, तथा कसले आकाशबाट तिमीहरूका निम्ति पानी बर्साए, जसबाट हामी उत्तम फलोद्यान उत्पादन गर्छौं? तिमीहरू त्यहाँका वृक्षहरूलाई उब्जाउन सक्दैनौ । के अल्लाहबाहेक अन्य कोही उपास्य छ? होइन, (अपितु) तिनीहरू (सन्मार्गबाट) विचलित भएका व्यक्तिहरू हुन् ।

أَمَّنْ جَعَلَ الْأَرْضَ قَرَارًا وَّ جَعَلَ خِلٰلَهَآ أَنْهٰرًا وَّ جَعَلَ لَهَا رَوَاسِيَ وَ جَعَلَ بَيْنَ الْبَحْرَيْنِ حَاجِزًا ءَاِلٰهٌ مَّعَ اللّٰهِ بَلْ أَكْثَرُهُمْ لَا يَعْلَمُوْنَ ﴿٦٢﴾

६२. अथवा, कसले पृथ्वीलाई विश्राम गर्ने स्थान बनाए, र त्यसमा नदीहरू बगाए, तथा त्यसमाथि दृढ पर्वतहरू स्थापना गरे, र दुइ जलस्रोतका बीचमा एउटा रोक खडा गरे? के अल्लाहबाहेक अन्य कोही उपास्य छ? होइन, (अपितु) तिनीहरूमध्ये अधिकतर व्यक्तिहरू जान्दैनन् ।

أَمَّنْ يُّجِيْبُ الْمُضْطَرَّ إِذَا دَعَاهُ وَ يَكْشِفُ السُّوْٓءَ وَ يَجْعَلُكُمْ خُلَفَآءَ الْأَرْضِ ءَاِلٰهٌ مَّعَ اللّٰهِ قَلِيْلًا مَّا تَذَكَّرُوْنَ ﴿٦٣﴾

६३. अथवा, जब कुनै पीडित व्यक्तिले उनलाई पुकार्छ तब कसले त्यसको उत्तर दिन्छन् र उसको दुःख निवारण गर्छन्, तथा तिमीहरूलाई पृथ्वीका उत्तराधिकारी (कसले) बनाउँछन्? के अल्लाहबाहेक अन्य कोही उपास्य छ? तिमीहरू अति कमै चिन्तन-मनन गर्छौ ।

أَمَّنْ يَّهْدِيْكُمْ فِيْ ظُلُمٰتِ الْبَرِّ وَالْبَحْرِ وَ مَنْ يُّرْسِلُ الرِّيٰحَ بُشْرًاۢ بَيْنَ يَدَيْ رَحْمَتِهٖ ءَاِلٰهٌ مَّعَ اللّٰهِ تَعٰلَى اللّٰهُ عَمَّا يُشْرِكُوْنَ ﴿٦٤﴾

६४. अथवा, तिमीहरूलाई धर्ती र समुद्रका हरेक (प्रकारका) अन्धकारमा कसले मार्ग देखाउँछन्, तथा आफ्नो करुणा (वर्षण गर्नुअघि शुभसन्देश स्वरूप कसले (निर्मल) हावा पठाउँछन्? के अल्लाहबाहेक अन्य कोही उपास्य छ? जुन वस्तुहरूलाई तिनीहरू (उनका) भागीदार तुल्याउँछन् अल्लाह तिनीहरूबाट धेरै उच्च रहेका छन् ।

أَمَّنْ يَّبْدَؤُا الْخَلْقَ ثُمَّ يُعِيْدُهٗ وَ مَنْ يَّرْزُقُكُمْ مِّنَ السَّمَآءِ وَالْأَرْضِ ءَاِلٰهٌ مَّعَ اللّٰهِ قُلْ هَاتُوْا بُرْهَانَكُمْ

६५. अथवा, कसले सृष्टिको सिर्जना प्रारम्भ गरी त्यस कार्यलाई निरन्तरता प्रदान गरेका छन् र कसले तिमीहरूलाई आकाश र पृथ्वीबाट जीविका प्रदान गर्ने गर्छन्? के

إِنْ كُنْتُمْ صٰدِقِيْنَ ﴿٦٤﴾

अल्लाहबाहेक अन्य कोही उपास्य छ? तिमी भन, "यदि तिमीहरू साँचा हौ भने आफ्नो प्रमाण प्रस्तुत गर ।"

قُلْ لَّا يَعْلَمُ مَنْ فِي السَّمٰوٰتِ وَالْاَرْضِ الْغَيْبَ اِلَّا اللّٰهُ ۚ وَمَا يَشْعُرُوْنَ اَيَّانَ يُبْعَثُوْنَ ﴿٦٥﴾

६६. तिमी भन, "अल्लाहबाहेक आकाशमण्डल र पृथ्वीमा रहेका कुनै प्राणीले अदृश्य कुरालाई जान्दैनन्, तथा तिनीहरूको पुनरुत्थान कहिले हुने हो भन्ने कुरासमेत तिनीहरूमध्ये कसैले जान्दैनन् ।"

بَلِ ادّٰرَكَ عِلْمُهُمْ فِي الْاٰخِرَةِ ۚ بَلْ هُمْ فِيْ شَكٍّ مِّنْهَا ۚ بَلْ هُمْ مِّنْهَا عَمُوْنَ ﴿٦٦﴾

६७. होइन, (अपितु) परलोकसम्बन्धी तिनीहरूको ज्ञान टुंगिन पुगेको छ, होइन, (वस्तुत:) तिनीहरू त्यसबारे सशङ्कित छन्, होइन, (अपितु) तिनीहरू त्यसबारे एकदमै अन्धा छन् ।

وَقَالَ الَّذِيْنَ كَفَرُوْٓا ءَاِذَا كُنَّا تُرٰبًا وَّاٰبَآؤُنَآ اَئِنَّا لَمُخْرَجُوْنَ ﴿٦٧﴾

६८. तथा अविश्वासी व्यक्तिहरू के भन्छन् भने, "के ! जब हामी र हाम्रा पुर्खाहरू धुलोमाटोमा परिणत हुनेछौं तब के हामीलाई (पुन:) निकालिनेछ त ?

لَقَدْ وُعِدْنَا هٰذَا نَحْنُ وَاٰبَآؤُنَا مِنْ قَبْلُ ۙ اِنْ هٰذَآ اِلَّآ اَسَاطِيْرُ الْاَوَّلِيْنَ ﴿٦٨﴾

६९. निश्चित रूपमा हामीलाई र हाम्रा पुर्खाहरूलाई पहिला पनि त्यसबारे प्रतिश्रुति दिइएको थियो, ती ता केवल प्राचीन मानिसहरूका कथाहरू हुन् ।

قُلْ سِيْرُوْا فِي الْاَرْضِ فَانْظُرُوْا كَيْفَ كَانَ عَاقِبَةُ الْمُجْرِمِيْنَ ﴿٦٩﴾

७०. तिमी भन, "तिमीहरू पृथ्वीमा भ्रमण गरेर हेर पापी मानिसहरूको परिणाम -अन्त) कस्तो (निकृष्ट) भएको थियो ।"

وَلَا تَحْزَنْ عَلَيْهِمْ وَلَا تَكُنْ فِيْ ضَيْقٍ مِّمَّا يَمْكُرُوْنَ ﴿٧٠﴾

७१. तथा तिनीहरूका निम्ति तिमी चिन्तित नहोउ, न त तिनीहरूको षडयन्त्रलाई लिएर तिमी सङ्कीर्णता अनुभव नगर ।

وَيَقُوْلُوْنَ مَتٰى هٰذَا الْوَعْدُ اِنْ كُنْتُمْ صٰدِقِيْنَ ﴿٧١﴾

७२. तथा तिनीहरू भन्छन्, "यदि तिमीहरू साँचा हौ भने त्यो प्रतिश्रुति कहिले (पूरा) हुनेछ त?"

७३. तिमी भन, "सम्भवत: यो त्यही (प्रतिश्रुत दण्ड) को केही अंश हो, जुन तिमीहरूमाथि शीघ्र बर्सियोस् भनी तिमीहरू (अहङ्कारपूर्वक) माग गर्छौ, सम्भवत: त्यो तिमीहरूको पछिलागेको छ ।"

قُلْ عَسٰٓى اَنْ يَّكُوْنَ رَدِفَ لَكُمْ بَعْضُ الَّذِيْ تَسْتَعْجِلُوْنَ ﴿٧٢﴾

७४. तथा निश्चय नै, तिम्रा प्रतिपालक मानिसहरूप्रति अति कृपालु रहेका छन्, परन्तु तिनीहरूमध्ये अधिकतर कृतज्ञ छैनन् ।

وَاِنَّ رَبَّكَ لَذُوْ فَضْلٍ عَلَى النَّاسِ وَلٰكِنَّ اَكْثَرَهُمْ لَا يَشْكُرُوْنَ ﴿٧٣﴾

७५. तथा निश्चय नै, तिनीहरूका छातीले जुन कुरा लुकाउँछन् र जुन कुरा प्रकट गर्छन्, तिम्रा प्रतिपालकले -ती सबै कुराहरूलाई) जान्दछन् ।

وَاِنَّ رَبَّكَ لَيَعْلَمُ مَا تُكِنُّ صُدُوْرُهُمْ وَمَا يُعْلِنُوْنَ ﴿٧٤﴾

७६. तथा आकाशमण्डल र पृथ्वीमा कुनै गुप्त वस्तु यस्तो छैन जसको उल्लेख एउटा स्पष्ट पुस्तकमा -लिपिबद्ध) रहेको नहोस् ।

وَمَا مِنْ غَآئِبَةٍ فِى السَّمَآءِ وَالْاَرْضِ اِلَّا فِيْ كِتٰبٍ مُّبِيْنٍ ﴿٧٥﴾

७७. निश्चय नै, इजरायलका सन्तानले जुन कुराहरूमा मतभेद राख्छन् यस कुरानले तीमध्ये अधिकतर (कुराहरू)बारे तिनीहरू समक्ष स्पष्ट वर्णन गर्छ ।

اِنَّ هٰذَا الْقُرْاٰنَ يَقُصُّ عَلٰى بَنِيْٓ اِسْرَآءِيْلَ اَكْثَرَ الَّذِيْ هُمْ فِيْهِ يَخْتَلِفُوْنَ ﴿٧٦﴾

७८. तथा यो वास्तवमा विश्वासीजनका निम्ति मार्गदर्शन र करुणास्वरूप रहेको छ ।

وَاِنَّهٗ لَهُدًى وَّرَحْمَةٌ لِّلْمُؤْمِنِيْنَ ﴿٧٧﴾

७९. वस्तुत:, तिम्रा प्रतिपालकले तिनीहरूका बीचमा आफ्नो न्यायकासाथ निर्णय गर्नेछन्, तथा उनी नै परम पराक्रमी, सर्वज्ञ छन् ।

اِنَّ رَبَّكَ يَقْضِيْ بَيْنَهُمْ بِحُكْمِهٖ ۚ وَهُوَ الْعَزِيْزُ الْعَلِيْمُ ﴿٧٨﴾

८०. अत: अल्लाहप्रति नै तिमी आफ्नो भरोसा राख, तिमी निश्चयपूर्वक स्पष्ट सत्यमा (कायम) रहेका छौ ।

فَتَوَكَّلْ عَلَى اللّٰهِ ۗ اِنَّكَ عَلَى الْحَقِّ الْمُبِيْنِ ﴿٧٩﴾

८१. वस्तुत: न तिमी मुर्दालाई, न त कानाहरूलाई आफ्ना कुरा सुनाउन सक्छौ, विशेषगरी जब तिनीहरू पिठ्यूँ देखाएर पछि

اِنَّكَ لَا تُسْمِعُ الْمَوْتٰى وَلَا تُسْمِعُ الصُّمَّ الدُّعَآءَ اِذَا وَلَّوْا مُدْبِرِيْنَ ﴿٨٠﴾

फर्कन्छन् ।

८२. तथा अन्धाहरूलाई तिनीहरूको पथभ्रष्टताबाट निकालेर तिमी सन्मार्ग देखाउन सक्नेछेनौ । तिमी केवल ती व्यक्तिहरूलाई आफ्ना कुरा सुन्ने योग्य बनाउन सक्छौ, जसले हाम्रा निर्देशनहरूप्रति विश्वास गर्छन्, अत: तिनीहरू आज्ञाकारी बन्छन् ।

وَمَآ أَنتَ بِهَٰدِى ٱلْعُمْىِ عَن ضَلَٰلَتِهِمْ ۖ إِن تُسْمِعُ إِلَّا مَن يُؤْمِنُ بِـَٔايَٰتِنَا فَهُم مُّسْلِمُونَ ﴿٨١﴾

८३. तथा जब तिनीहरूविरुद्ध प्रतिश्रुत वाक्य पूरा हुन्छ, (तब) तिनीहरूका निम्ति पृथ्वीबाट हामी यस्तो प्राणी निकाल्नेछौं, जसले तिनीहरूलाई घायल गर्नेछ; किनभने मानिसहरू हाम्रा निर्देशनहरूप्रति विश्वास गर्दैनथे ।

وَإِذَا وَقَعَ ٱلْقَوْلُ عَلَيْهِمْ أَخْرَجْنَا لَهُمْ دَآبَّةً مِّنَ ٱلْأَرْضِ تُكَلِّمُهُمْ أَنَّ ٱلنَّاسَ كَانُوا۟ بِـَٔايَٰتِنَا لَا يُوقِنُونَ ﴿٨٢﴾

८४. तथा -तिनीहरूलाई) त्यो दिन (स्मरण गराउ) जब हामी हरेक जातिबाट हाम्रा निर्देशनहरूलाई अस्वीकार गर्ने व्यक्तिहरूको एउटा ठूलो समूहलाई एकत्रित गर्नेछौं, तथा तिनीहरूलाई (भिन्नभिन्न) समूह बनाएर राखिनेछ ।

وَيَوْمَ نَحْشُرُ مِن كُلِّ أُمَّةٍ فَوْجًا مِّمَّن يُكَذِّبُ بِـَٔايَٰتِنَا فَهُمْ يُوزَعُونَ ﴿٨٣﴾

८५. अत: जब तिनीहरू (उनीसमक्ष) पुग्नेछन् तब उनले भन्नेछन्, "के तिमीहरूले मेरा निर्देशनहरूलाई तिनीहरूबारे पूर्णज्ञान प्राप्त नगरी (अति शीघ्र) अस्वीकार गरेका थियौ ?(यदि त्यसो नभएमा) तिमीहरू के (चाहिँ) गर्ने गर्थ्यौ?"

حَتَّىٰٓ إِذَا جَآءُو قَالَ أَكَذَّبْتُم بِـَٔايَٰتِى وَلَمْ تُحِيطُوا۟ بِهَا عِلْمًا أَمَّاذَا كُنتُمْ تَعْمَلُونَ ﴿٨٤﴾

८६. तथा तिनीहरूले गरेको अत्याचारका कारण तिनीहरूमाथि प्रतिश्रुत वाक्य (दण्डस्वरूप) बर्सने छ, तथा तिनीहरू बोल्न (सक्ने)छैनन्

وَوَقَعَ ٱلْقَوْلُ عَلَيْهِم بِمَا ظَلَمُوا۟ فَهُمْ لَا يَنطِقُونَ ﴿٨٥﴾

८७. रात्रिलाई हामीले तिनीहरूको विश्रामका निम्ति तथा दिनलाई दृष्टि प्रदानकारीस्वरूप

أَلَمْ يَرَوْا۟ أَنَّا جَعَلْنَا ٱلَّيْلَ لِيَسْكُنُوا۟ فِيهِ وَٱلنَّهَارَ مُبْصِرًا ۚ إِنَّ فِى ذَٰلِكَ

لَاٰيٰتٍ لِّقَوۡمٍ يُّؤۡمِنُوۡنَ ۝٨٦

बनाएका छौं भनी तिनीहरूले देखेका छैनन् र? यस कुरमा विश्वासीजनका निम्ति चिह्नहरू रहेका छन् ।

وَيَوۡمَ يُنۡفَخُ فِى الصُّوۡرِ فَفَزِعَ مَنۡ فِى السَّمٰوٰتِ وَمَنۡ فِى الۡاَرۡضِ اِلَّا مَنۡ شَآءَ اللّٰهُ ؕ وَكُلٌّ اَتَوۡهُ دٰخِرِيۡنَ ۝٨٧

८८. तथा जब बिगुल बजाइनेछ, त्यसदिन आकाशमण्डल र पृथ्वीमा रहेका सबै (प्राणीहरू) भयविह्वल हुनेछन्, सिवाय त्यो (व्यक्ति) जसलाई अल्लाहले त्यसबाट बचाउन चाहनेछन् । तथा सबैजना उनीसमक्ष विनम्र बनी उपस्थित हुनेछन् ।

وَتَرَى الۡجِبَالَ تَحۡسَبُهَا جَامِدَةً وَّهِىَ تَمُرُّ مَرَّ السَّحَابِ ؕ صُنۡعَ اللّٰهِ الَّذِىۡۤ اَتۡقَنَ كُلَّ شَىۡءٍ ؕ اِنَّهٗ خَبِيۡرٌۢ بِمَا تَفۡعَلُوۡنَ ۝٨٨

८९. तथा तिमी पर्वतहरूलाई देखेर तिनीहरूलाई स्थिर छन् भन्ने ठान्छौ, परन्तु तिनीहरू बादलझैं गतिशील रहेका छन्– यो उनै अल्लाहको कार्य हो, जसले प्रत्येक वस्तुलाई दृढ र बलिष्ठ बनाएका छन् । वस्तुतः अल्लाहले तिमीहरूका कार्यकलापलाई राम्ररी जान्दछन् ।

مَنۡ جَآءَ بِالۡحَسَنَةِ فَلَهٗ خَيۡرٌ مِّنۡهَا ۚ وَهُمۡ مِّنۡ فَزَعٍ يَّوۡمَئِذٍ اٰمِنُوۡنَ ۝٨٩

९०. जसले उत्तम कार्य गर्छ, त्यसलाई त्योभन्दा उत्तम प्रतिदान प्राप्त हुनेछ, तथा त्यस्ता व्यक्तिहरू त्यस दिनको आतङ्कबाट सुरक्षित रहनेछन् ।

وَمَنۡ جَآءَ بِالسَّيِّئَةِ فَكُبَّتۡ وُجُوۡهُهُمۡ فِى النَّارِ ؕ هَلۡ تُجۡزَوۡنَ اِلَّا مَا كُنۡتُمۡ تَعۡمَلُوۡنَ ۝٩٠

९१. तथा जुन व्यक्तिहरूले अपकर्म गर्छन्, तिनीहरूलाई उँधोमुख पारी अग्निमा होमिनेछ । (र भनिनेछ) : "के तिमीहरूले गर्ने गरेका कार्यहरू अनुरूप नै तिमीहरूलाई प्रतिदान प्राप्त भएको छैन र?

اِنَّمَاۤ اُمِرۡتُ اَنۡ اَعۡبُدَ رَبَّ هٰذِهِ الۡبَلۡدَةِ الَّذِىۡ حَرَّمَهَا وَلَهٗ كُلُّ شَىۡءٍ ۖ وَّاُمِرۡتُ اَنۡ اَكُوۡنَ مِنَ الۡمُسۡلِمِيۡنَ ۝٩١

९२. (तिमी भन), "मलाई त यस नगरका प्रतिपालक, जसले यसलाई पवित्र तुल्याएका छन् र जो सम्पूर्ण वस्तुहरूका स्वामी हुन्, उनकै उपासना गर्ने आदेश भएकोछ, तथा (अल्लाहका) आज्ञाकारी व्यक्तिहरूमा सामेल हुन मलाई आदेश भएको छ,

وَاَنۡ اَتۡلُوَا الۡقُرۡاٰنَ ۚ فَمَنِ اهۡتَدٰى فَاِنَّمَا يَهۡتَدِىۡ لِنَفۡسِهٖ ۚ وَمَنۡ ضَلَّ فَقُلۡ اِنَّمَاۤ اَنَا مِنَ الۡمُنۡذِرِيۡنَ ۝

९३. "(यसै प्रकार) कुरानको पाठ गरेर सुनाउने (आदेश भएको छ) ।" अतः जसले मार्गदर्शनको अनुसरण गर्छ, त्यसले आफ्नो आत्माको (मङ्गलसाधनका) निम्ति त्यसको अनुसरण गर्छ, तथा जो व्यक्ति विपथगामी रहको छ (त्यसलाई) (के) भन (भने), "म ता केवल एउटा सावधानकर्ता हुँ ।"

وَقُلِ الۡحَمۡدُ لِلّٰهِ سَيُرِيۡكُمۡ اٰيٰتِهٖ فَتَعۡرِفُوۡنَهَا ؕ وَمَا رَبُّكَ بِغَافِلٍ عَمَّا تَعۡمَلُوۡنَ ۝

९४. तथा तिमी भन, "सम्पूर्ण प्रकारका प्रशंसाका अल्लाह नै अधिकारी रहेका छन् । उनले अतिशीघ्र तिमीहरूलाई आफ्ना चिह्नहरू देखाउने छन् तब तिमीहरूले तिनीहरूलाई जान्नेछौ ।" तथा तिमीहरूका कार्यहरूप्रति तिम्रा प्रतिपालक अनभिज्ञ छैनन्




## अल्-क.सस्
(हिजरतअघि उद्घाटित)

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

२. ता सिन मिम* ।

طٰسٓمّٓ ﴿١﴾

३. यी स्पष्टदर्शी पुस्तकका आयातहरू हुन्।

تِلْكَ اٰيٰتُ الْكِتٰبِ الْمُبِيْنِ ﴿٢﴾

४. विश्वास स्थापना गर्ने मानिसहरूको (फाइदाका) निम्ति मूसा र फिरौनको घटनाको (एकांश) तिमीप्रति हामी सत्यकासाथ पुनरावृत्ति गरेर सनाउँछौं ।

نَتْلُوْا عَلَيْكَ مِنْ نَّبَاِ مُوْسٰى وَ فِرْعَوْنَ بِالْحَقِّ لِقَوْمٍ يُّؤْمِنُوْنَ ﴿٣﴾

५. वस्तुतः फिरौनले देशमा अहङ्कारपूर्ण व्यवहार गर्‍यौं, तथा मानिसहरूलाई विभिन्न समूहमा विभाजन गरेको थियो: तिनीहरूमध्ये एउटा समूहलाई उसले दुर्बल बनाउने दृढनिश्चय गरेको थियो, (अतः) तिनीहरूका पुत्रहरूलाई हत्या गर्‍यो तथा तिनीहरूका महिलाहरूलाई भने जीवित राख्‍यो । निश्चयपूर्वक, त्यो अशान्ति सिर्जना गर्ने व्यक्तिहरूमध्ये (एक) थियो ।

اِنَّ فِرْعَوْنَ عَلَا فِي الْاَرْضِ وَ جَعَلَ اَهْلَهَا شِيَعًا يَّسْتَضْعِفُ طَآئِفَةً مِّنْهُمْ يُذَبِّحُ اَبْنَآءَهُمْ وَيَسْتَحْيٖ نِسَآءَهُمْ ؕ اِنَّهٗ كَانَ مِنَ الْمُفْسِدِيْنَ ﴿٤﴾

६. तथा देशमा दुर्बल ठानिएका व्यक्तिहरूमाथि हामीले अनुग्रह गर्ने इच्छा गर्‍यौं, तथा तिनीहरूलाई नेतृत्व प्रदान गर्ने र तिनीहरूलाई (हाम्रा अनुग्रहका) उत्तराधिकारी बनाउने (इच्छा गर्‍यौं),

وَ نُرِيْدُ اَنْ نَّمُنَّ عَلَى الَّذِيْنَ اسْتُضْعِفُوْا فِي الْاَرْضِ وَنَجْعَلَهُمْ اَئِمَّةً وَّ نَجْعَلَهُمُ الْوٰرِثِيْنَ ﴿٥﴾

७. तथा तिनीहरूलाई देशमा सम्पन्न तुल्याउन र फिरौन र हामान तथा तिनीहरूका लस्करलाई उनीहरूबाट जुन

وَ نُمَكِّنَ لَهُمْ فِي الْاَرْضِ وَ نُرِيَ فِرْعَوْنَ وَهَامٰنَ وَجُنُوْدَهُمَا مِنْهُمْ مَّا كَانُوْا يَحْذَرُوْنَ ﴿٦﴾

---

* परम पवित्र सर्वस्रोता, सर्वज्ञ अल्लाह !

कुराको आशंका थियो त्यो कुरा देखाउने (इच्छा गऱ्यौं) ।

८. तथा मूसाकी मातालाई हामीले (के भन्दै) आकाशवाणी गऱ्यौं (भने), "तिमी उनलाई दूध ख्वाउ, तथा जब तिमी उनको (ज्यानलाई) लिएर भयभीत हुन्छयौ, तब उनलाई खोलामा बगाइ देउ र तिमी भयभीत नहोउ न त चिन्तित नै हौ, किनभने उनलाई हामी तिमीतर्फै फर्काएर ल्याउनेछौं, तथा उनलाई हामी एकजना सन्देशवाहक बनाउनेछौं ।"

وَأَوْحَيْنَآ إِلَىٰٓ أُمِّ مُوسَىٰٓ أَنْ أَرْضِعِيهِ ۖ فَإِذَا خِفْتِ عَلَيْهِ فَأَلْقِيهِ فِى ٱلْيَمِّ وَلَا تَخَافِى وَلَا تَحْزَنِىٓ ۖ إِنَّا رَآدُّوهُ إِلَيْكِ وَجَاعِلُوهُ مِنَ ٱلْمُرْسَلِينَ ۝

९. तथा उनलाई फिरौनका परिवारले पछि गएर उनी तिनीहरूका शत्रु र सन्तापका कारण बन्नेछन् भन्ने कुरालाई (नजानी) खोलाबाट उठायो । वस्तुतः फिरौन र हामान तथा तिनीहरूका लस्करहरू पापी व्यक्तिहरू थिए ।

فَٱلْتَقَطَهُۥٓ ءَالُ فِرْعَوْنَ لِيَكُونَ لَهُمْ عَدُوًّا وَحَزَنًا ۗ إِنَّ فِرْعَوْنَ وَهَٰمَٰنَ وَجُنُودَهُمَا كَانُوا۟ خَٰطِـِٔينَ ۝

१०. तथा फिरौनकी पत्नीले भनिन्, "(त्यो बालक) मेरो र तिम्रो निम्ति नेत्रको शीतलतास्वरूप हुनेछ । अतः त्यसलाई नमार । सम्भवतः त्यो हाम्रा निम्ति फलदायक हुनेछ, अथवा त्यसलाई हामी (दत्तक)पुत्रस्वरूप ग्रहण गर्न सक्नेछौं ।" तथा तिनीहरूलाई (त्यसको परिणाम) थाहा थिएन

وَقَالَتِ ٱمْرَأَتُ فِرْعَوْنَ قُرَّتُ عَيْنٍ لِّى وَلَكَ ۖ لَا تَقْتُلُوهُ عَسَىٰٓ أَن يَنفَعَنَآ أَوْ نَتَّخِذَهُۥ وَلَدًا وَهُمْ لَا يَشْعُرُونَ ۝

११. तथा मूसाकी आमाको हृदय (चिन्ता)मुक्त भयो । यदि हामीले उनको हृदयलाई (पूर्ण) विश्वासी बनाउनका निम्ति दृढता प्रदान नगरेका भए, अवश्यरूपमा उनले उनको (मूसाको) भेद खोल्ने थिइन ।

وَأَصْبَحَ فُؤَادُ أُمِّ مُوسَىٰ فَٰرِغًا ۖ إِن كَادَتْ لَتُبْدِى بِهِۦ لَوْلَآ أَن رَّبَطْنَا عَلَىٰ قَلْبِهَا لِتَكُونَ مِنَ ٱلْمُؤْمِنِينَ ۝

१२. तथा उनले उनकी बहिनीलाई भनिन्, "उनलाई पछ्याउ ।" अतः तिनले उनीमाथि टाढाबाट दृष्टि राख्दै गइन्, तथा तिनीहरूलाई थाहा थिएन ।

وَقَالَتْ لِأُخْتِهِۦ قُصِّيهِ ۖ فَبَصُرَتْ بِهِۦ عَن جُنُبٍ وَهُمْ لَا يَشْعُرُونَ ۝

१३. तथा हामीले पहिला नै उनका निम्ति धाईआमा अस्वीकार्य तुल्याएका थियौं, त्यसकारण तिनले भनिन्, "के म तिमीहरूलाई यस्तो परिवारसम्म पुऱ्याउँ जसले यिनलाई तिमीहरूका निम्ति पालेर हुर्काउने छन् र तिनीहरू यिनका शुभचिन्तक रहनेछन्?"

وَحَرَّمْنَا عَلَيْهِ الْمَرَاضِعَ مِنْ قَبْلُ فَقَالَتْ هَلْ أَدُلُّكُمْ عَلَىٰ أَهْلِ بَيْتٍ يَكْفُلُونَهُ لَكُمْ وَهُمْ لَهُ نَاصِحُونَ ﴿١٢﴾

१४. यसप्रकार हामीले उनलाई पुनः उनकी माताकहाँ पुऱ्यायौं ताकि उनका नेत्रहरूलाई शीतलता (शान्ति) प्राप्त होस् र उनी शोकग्रस्त नहुन्, तथा अल्लाहको वचन सत्य हुन्छ भनी उनले जानून् । परन्तु तिनीहरूमध्ये अधिकतर व्यक्तिहरूले जान्दैनन् ।

فَرَدَدْنَاهُ إِلَىٰ أُمِّهِ كَيْ تَقَرَّ عَيْنُهَا وَلَا تَحْزَنَ وَلِتَعْلَمَ أَنَّ وَعْدَ اللَّهِ حَقٌّ وَلَٰكِنَّ أَكْثَرَهُمْ لَا يَعْلَمُونَ ﴿١٣﴾

१५. तथा जब उनी आफ्नो परिपक्वता (को उमेर)मा पुगे र पूर्ण यौवन प्राप्त गरे, तब हामीले उनलाई निर्णयशक्ति र ज्ञान प्रदान गऱ्यौं, तथा पुण्यकर्म गर्ने व्यक्तिहरूलाई यसैप्रकार हामी प्रतिदान प्रदान गर्ने गर्छौं ।

وَلَمَّا بَلَغَ أَشُدَّهُ وَاسْتَوَىٰ آتَيْنَاهُ حُكْمًا وَعِلْمًا ۚ وَكَذَٰلِكَ نَجْزِي الْمُحْسِنِينَ ﴿١٤﴾

१६. तथा उनले यस्तो समयमा नगरमा प्रवेश गरे जब त्यहाँका निवासीहरू निद्रावस्थामा थिए, उनले त्यहाँ दुइजना व्यक्तिहरूलाई परस्पर लड्दै गरेको देखे– तिनीहरूमध्ये एउटा व्यक्ति भने उनकै जातिको थियो, तथा अर्को व्यक्तिचाहिँ शत्रुपक्षको थियो । तथा उनको जातिको त्यस व्यक्तिले उनको शत्रुपक्षको व्यक्तिविरुद्ध उनीसित मद्दत माग्यो । अतः मूसाले उसमाथि आफ्नो मुक्का प्रहार गरे र (त्यसबाट) त्यो व्यक्ति हताहत भयो । उनले भने, "यो ता सैतानको क्रियाकलाप हो, वस्तुतः त्यो (सैतान) एउटा शत्रु र स्पष्ट धोकेबाज रहेको छ ।"

وَدَخَلَ الْمَدِينَةَ عَلَىٰ حِينِ غَفْلَةٍ مِنْ أَهْلِهَا فَوَجَدَ فِيهَا رَجُلَيْنِ يَقْتَتِلَانِ هَٰذَا مِنْ شِيعَتِهِ وَهَٰذَا مِنْ عَدُوِّهِ ۖ فَاسْتَغَاثَهُ الَّذِي مِنْ شِيعَتِهِ عَلَى الَّذِي مِنْ عَدُوِّهِ فَوَكَزَهُ مُوسَىٰ فَقَضَىٰ عَلَيْهِ ۖ قَالَ هَٰذَا مِنْ عَمَلِ الشَّيْطَانِ ۖ إِنَّهُ عَدُوٌّ مُضِلٌّ مُبِينٌ ﴿١٥﴾

قَالَ رَبِّ إِنِّي ظَلَمْتُ نَفْسِي فَاغْفِرْ لِي فَغَفَرَ لَهُ ۚ إِنَّهُ هُوَ الْغَفُورُ الرَّحِيمُ ﴿١٦﴾

१७. उनले भने, "हे मेरा प्रतिपालक, मैले आफ्नै आत्मामाथि अत्याचार गरेको छु । अतः मलाई क्षमा गर ।" तब उनले उनलाई क्षमा गरिदिए,निश्चय नै उनी (अल्लाह) परम क्षमाशील, परम करुणाशील छन् ।

قَالَ رَبِّ بِمَا أَنْعَمْتَ عَلَيَّ فَلَنْ أَكُونَ ظَهِيرًا لِلْمُجْرِمِينَ ﴿١٧﴾

१८. उनले भने, "हे मेरा प्रतिपालक, तिमीले ममाथि अनुग्रह गरेका छौ त्यसकारण अब कदापि म कुनै अपराधी व्यक्तिको सहयोगी बन्नेछैन ।"

فَأَصْبَحَ فِي الْمَدِينَةِ خَائِفًا يَتَرَقَّبُ فَإِذَا الَّذِي اسْتَنْصَرَهُ بِالْأَمْسِ يَسْتَصْرِخُهُ ۚ قَالَ لَهُ مُوسَىٰ إِنَّكَ لَغَوِيٌّ مُبِينٌ ﴿١٨﴾

१९. तथा उनले त्रासित अवस्थामा सतर्कताका साथ (हिँड्दै) आफ्नो दिन प्रारम्भ गरे; तथा हेर ! जुन व्यक्तिले अघिल्लो दिन उनीसित मद्दत मागेको थियो त्यही व्यक्तिले (पुनः) उनलाई मद्दतका निम्ति कराउँदै बोलायो । मूसाले त्यसलाई भने, "तिमी ता निश्चयपूर्वक एकजना स्पष्ट सीमोल्लङ्घनकारी व्यक्ति हौ ।"

فَلَمَّا أَنْ أَرَادَ أَنْ يَبْطِشَ بِالَّذِي هُوَ عَدُوٌّ لَهُمَا قَالَ يَا مُوسَىٰ أَتُرِيدُ أَنْ تَقْتُلَنِي كَمَا قَتَلْتَ نَفْسًا بِالْأَمْسِ ۖ إِنْ تُرِيدُ إِلَّا أَنْ تَكُونَ جَبَّارًا فِي الْأَرْضِ وَمَا تُرِيدُ أَنْ تَكُونَ مِنَ الْمُصْلِحِينَ ﴿١٩﴾

२०. तथा जब उनले तिनीहरू दुबैको शत्रु भएको त्यस व्यक्तिलाई समात्ने निश्चय गरे तब त्यसले भन्यो, "ए मूसा, जसरी तिमीले हिजो एउटा मानिसको हत्या गरेका थियौ, के तिमी मलाई पनि त्यसरी नै हत्या गर्न चाहन्छौ? तिमी ता देशमा एकजना अत्याचारी (व्यक्ति) बन्न चाहन्छौ र तिमी शान्तिस्थापक बन्न चाहँदैनौ ।"

وَجَاءَ رَجُلٌ مِنْ أَقْصَا الْمَدِينَةِ يَسْعَىٰ قَالَ يَا مُوسَىٰ إِنَّ الْمَلَأَ يَأْتَمِرُونَ بِكَ لِيَقْتُلُوكَ فَاخْرُجْ إِنِّي لَكَ مِنَ النَّاصِحِينَ ﴿٢٠﴾

२१. तथा त्यस नगरको दूर दिशाबाट एउटा व्यक्ति दगुर्दै आयो र भन्यो, "ए मूसा, सत्य कुरा के हो भने– यहाँका हाकिमहरू निस्सन्देह तिमीविरुद्ध तिमीलाई मार्ने छलफल गरिरहेछन् । त्यसकारण तिमी यहाँबाट निस्केर जाउ, निश्चयपूर्वक म तिम्रो शुभचिन्तक हुँ ।"

فَخَرَجَ مِنْهَا خَائِفًا يَتَرَقَّبُ ۖ قَالَ رَبِّ نَجِّنِي مِنَ الْقَوْمِ الظَّالِمِينَ ﴿٢١﴾

२२. अतः उनी त्यहाँबाट डराउँदै सतर्कतापूर्वक प्रस्थान गरे । उनले भने, " हे

मेरा प्रतिपालक, मलाई अत्याचारकारी मानिसहरूबाट मुक्ति प्रदान गर ।"

وَلَمَّا تَوَجَّهَ تِلْقَآءَ مَدْيَنَ قَالَ عَسٰى رَبِّيٓ اَنْ يَّهْدِيَنِيْ سَوَآءَ السَّبِيْلِ ﴿٢٢﴾

२३. तथा जब उनले मिद्यानतर्फ आफ्नो दृष्टि गरे तब उनले भने, "मेरा प्रतिपालकले मलाई सन्मार्ग देखाउनेछन् भन्ने म आशा राख्छु ।

وَلَمَّا وَرَدَ مَآءَ مَدْيَنَ وَجَدَ عَلَيْهِ اُمَّةً مِّنَ النَّاسِ يَسْقُوْنَ ۙ۬ وَوَجَدَ مِنْ دُوْنِهِمُ امْرَاَتَيْنِ تَذُوْدٰنِ ۚ قَالَ مَا خَطْبُكُمَا ؕ قَالَتَا لَا نَسْقِيْ حَتّٰى يُصْدِرَ الرِّعَآءُ ٚ وَاَبُوْنَا شَيْخٌ كَبِيْرٌ ﴿٢٣﴾

२४. तथा जब उनी मिद्यानको जलस्रोत नजिक पुगे त्यहाँ उनले मानिसहरूको एउटा समूहलाई (आफ्ना जनावरहरूलाई) पानी ख्वाउँदै गरेको पाए । तथा तिनीहरूभन्दा पछाडि दुइवटी महिलाहरूलाई (आफ्ना जनावर) रोकेर खडा रहेको देखे । उनले भने, "तिमीहरूलाई के भएको छ?" तिनीहरूले भने, "जबसम्म ती भेडा गोठालाहरूले (आफ्ना बथान) लिएर जाँदैनन् तबसम्म हामी (आफ्ना बथानलाई) पानी ख्वाउन सक्दैनौ, तथा हाम्रा पिता अति वृद्ध व्यक्ति छन् ।"

فَسَقٰى لَهُمَا ثُمَّ تَوَلّٰٓى اِلَى الظِّلِّ فَقَالَ رَبِّ اِنِّيْ لِمَآ اَنْزَلْتَ اِلَيَّ مِنْ خَيْرٍ فَقِيْرٌ ﴿٢٤﴾

२५. अतः उनले -तिनीहरूको भेडाको बथानलाई) उनीहरूका निम्ति पानी ख्वाइदिए । त्यसपछि उनी एकतर्फ लागेर छाँयामा बसे र भने, "हे मेरा प्रतिपालक, जुनसुकै उत्तम कुरो तिमीले मलाई प्रदान गर्नेछौ म त्यसैको भिखारी रहेको छु ।"

فَجَآءَتْهُ اِحْدٰىهُمَا تَمْشِيْ عَلَى اسْتِحْيَآءٍ ۫ قَالَتْ اِنَّ اَبِيْ يَدْعُوْكَ لِيَجْزِيَكَ اَجْرَ مَا سَقَيْتَ لَنَا ؕ فَلَمَّا جَآءَهٗ وَقَصَّ عَلَيْهِ الْقَصَصَ ۙ قَالَ لَا تَخَفْ ٚ نَجَوْتَ مِنَ الْقَوْمِ الظّٰلِمِيْنَ ﴿٢٥﴾

२६. तथा ती दुई (महिलाहरू) मध्ये एउटी (महिला) लजाउँदै उनीसमक्ष आइन् । तिनले भनिन्, "हाम्रा निम्ति तिमीले (हाम्रा भेडाको बथानलाई) पानी ख्वाएको प्रतिदान दिन तिमीलाई मेरा पिताले बोलाइरहेछन् ।" अतः जब उनी उनीसमक्ष आएर आफ्नो घटना सुनाए, (तब) उनले भने, "तिमी नडराउ, तिमीले अत्याचारी मनिसहरूबाट मुक्तिप्राप्त गरिसकेका छौ ।"

२७. ती दुई (महिलाहरू) मध्ये एउटीले भनिन्, "हे मेरा पिता, यिनलाई तिमी नोकरीमा राख, किनभने जुन व्यक्ति बलिष्ठ र इमान्दार (धरोहररक्षक ) छ, तिमीले नोकरीमा राख्ने व्यक्तिहरूमध्ये त्यो सर्वोत्तम रहेको छ ।"

قَالَتْ إِحْدٰىهُمَا يٰٓأَبَتِ اسْتَأْجِرْهُ ز إِنَّ خَيْرَ مَنِ اسْتَأْجَرْتَ الْقَوِيُّ الْأَمِيْنُ ﴿٢٦﴾

२८. उनले भने, "तिमीले आठवर्ष यहाँ नोकरी गरी मेरो सेवा गर्ने शर्तमा म आफ्ना दुइवटी छोरीहरूमध्ये एउटीको विवाह तिमीसित गर्न चाहन्छु । परन्तु यदि तिमीले दस (वर्ष) पूरा गरेमा त्यो तिम्रो आफ्नोतर्फबाट (उपकारस्वरूप) हुनेछ । तथा म तिमीमाथि कुनै भार लाद्न चाहन्न, यदि अल्लाहको इच्छा रहेमा तिमीले मलाई एउटा सदव्यवहार- कर्तास्वरूप पाउनेछौ ।"

قَالَ إِنِّيْٓ أُرِيْدُ أَنْ أُنْكِحَكَ إِحْدَى ابْنَتَيَّ هٰتَيْنِ عَلٰٓى أَنْ تَأْجُرَنِيْ ثَمٰنِيَ حِجَجٍ ج فَإِنْ أَتْمَمْتَ عَشْرًا فَمِنْ عِنْدِكَ ج وَمَآ أُرِيْدُ أَنْ أَشُقَّ عَلَيْكَ ط سَتَجِدُنِيْٓ إِنْ شَآءَ اللّٰهُ مِنَ الصّٰلِحِيْنَ ﴿٢٧﴾

२९. उनले -मूसाले) भने, "यो कुरो म र तिमीबीच (दृढनिश्चित) भयो । ती दुइमध्ये जुन म्याद पूरा गरे पनि ममाथि कुनै आरोप लाग्नेछैन, तथा हाम्रा कुराप्रति अल्लाह साक्षी रहेका छन् ।"

قَالَ ذٰلِكَ بَيْنِيْ وَ بَيْنَكَ ط أَيَّمَا الْأَجَلَيْنِ قَضَيْتُ فَلَا عُدْوَانَ عَلَيَّ ط وَاللّٰهُ عَلٰى مَا نَقُوْلُ وَكِيْلٌ ﴿٢٨﴾

३०. तथा जब मूसाले निर्धारित म्याद पूरा गरे र आफ्ना परिवारलाई लिएर प्रस्थान गरे, (तब) उनले (तूर) पहाडतर्फ एउटा अग्नि देखे । उनले आफ्ना परिवारलाई भने, "तिमीहरू यहाँ पर्ख, मैले एउटा अग्नि देखेको छु, सम्भवतः त्यहाँबाट म तिमीहरूका निम्ति कुनै (लाभदायक) जानकारी अथवा बल्दै गरेको (आगाको) कोइलो ल्याउन सक्नेछु ताकि तिमीहरू त्यसद्वारा स्वयम्लाई सेक ।"

فَلَمَّا قَضٰى مُوْسَى الْأَجَلَ وَ سَارَ بِأَهْلِهٖٓ اٰنَسَ مِنْ جَانِبِ الطُّوْرِ نَارًا ج قَالَ لِأَهْلِهِ امْكُثُوْٓا إِنِّيْٓ اٰنَسْتُ نَارًا لَّعَلِّيْٓ اٰتِيْكُمْ مِّنْهَا بِخَبَرٍ أَوْ جَذْوَةٍ مِّنَ النَّارِ لَعَلَّكُمْ تَصْطَلُوْنَ ﴿٢٩﴾

३१. तथा जब उनी त्यससमक्ष आए, त्यस उपत्यकाको दाहिने दिशामा अवस्थित एउटा पवित्र स्थानको एउटा वृक्षबाट उनलाई (के भन्ने शब्दद्वारा) बोलाइयो (भने), "ऐ मूसा वस्तुतः म (नै) विश्व ब्रह्माण्डको स्वामी,

فَلَمَّآ أَتٰىهَا نُوْدِيَ مِنْ شَاطِئِ الْوَادِ الْأَيْمَنِ فِي الْبُقْعَةِ الْمُبٰرَكَةِ مِنَ الشَّجَرَةِ أَنْ يّٰمُوْسٰىٓ إِنِّيْٓ أَنَا اللّٰهُ رَبُّ الْعٰلَمِيْنَ ﴿٣٠﴾

अल्लाह हुँ ।"

وَاَنْ اَلْقِ عَصَاكَ ۗ فَلَمَّا رَاٰهَا تَهْتَزُّ كَاَنَّهَا جَآنٌّ وَّلّٰى مُدْبِرًا وَّلَمْ يُعَقِّبْ ۗ يٰمُوْسٰٓى اَقْبِلْ وَلَا تَخَفْ ۗ اِنَّكَ مِنَ الْاٰمِنِيْنَ ﴿٣١﴾

३२. तथा (के पनि भनियो भने): तिमी आफ्नो लौरो (तल) फ्याँक ।" तथा जब उनले त्यसलाई देखे त्यो मानौं एउटा हलचल गरिरहेको सर्पस्वरुप थियो, तब उनी डरले पछि फर्किएर भागे र (कुनै कुराको) प्रतीक्षा गरेनन् । (पुन: भनियो), "ए मूसा, नडराइकन अघि बढ; तिमी निश्चयपूर्वक सुरक्षित रहने व्यक्तिहरूमध्ये (एक) रहेका छौ ।"

اُسْلُكْ يَدَكَ فِيْ جَيْبِكَ تَخْرُجْ بَيْضَآءَ مِنْ غَيْرِ سُوْٓءٍ ۫ وَّاضْمُمْ اِلَيْكَ جَنَاحَكَ مِنَ الرَّهْبِ فَذٰنِكَ بُرْهَانٰنِ مِنْ رَّبِّكَ اِلٰى فِرْعَوْنَ وَمَلَا۟ىِٕهٖ ۗ اِنَّهُمْ كَانُوْا قَوْمًا فٰسِقِيْنَ ﴿٣٢﴾

३३. "आफ्नो हाथ आफ्नो छातिमा हाल, त्यो कुनै कु-प्रभाव (बिमारी) बिनै सेतो भई बाहिर निस्कने छ, तथा आफ्नो नारी डरमुक्त भई आफूतर्फ तान । अत: ती दुइवटा (चिह्नहरू) फिरौन र उसका दरबारीहरूका निम्ति तिम्रा प्रतिपालकका तर्फबाट प्रमाणस्वरूप हुनेछन् । तिनीहरू निश्चयपूर्वक सीमोल्लङ्घनकारी मानिसहरू हुन् ।"

قَالَ رَبِّ اِنِّيْ قَتَلْتُ مِنْهُمْ نَفْسًا فَاَخَافُ اَنْ يَّقْتُلُوْنِ ﴿٣٣﴾

३४. उनले भने, "हे मेरा प्रतिपालक, मैले तिनीहरूको एउटा मानिसको हत्या गरेको थिएँ, (तथा) तिनीहरूले मलाई मार्लान् भनी म डराउँछु ।

وَاَخِيْ هٰرُوْنُ هُوَ اَفْصَحُ مِنِّيْ لِسَانًا فَاَرْسِلْهُ مَعِيَ رِدْاً يُّصَدِّقُنِيْٓ ۫ اِنِّيْٓ اَخَافُ اَنْ يُّكَذِّبُوْنِ ﴿٣٤﴾

३५. "तथा मेरा भाइ हारुन वार्ता गर्नमा म भन्दा अधिक सिपालु छन्, त्यसकारण तिनलाई सहयोगीस्वरूप मसित पठाउ ताकि मेरो सत्यताको उनले साक्षी दिऊन् । तिनीहरूले मलाई मिथ्यावादी रहेको आरोप लगाउलान् भनी म डराउँछु ।"

قَالَ سَنَشُدُّ عَضُدَكَ بِاَخِيْكَ وَنَجْعَلُ لَكُمَا سُلْطٰنًا فَلَا يَصِلُوْنَ اِلَيْكُمَا ۚ بِاٰيٰتِنَا ۚ اَنْتُمَا وَمَنِ اتَّبَعَكُمَا الْغٰلِبُوْنَ ﴿٣٥﴾

३६. (अल्लाहले) भने, "तिम्रा भाइसहित हामी तिम्रो हातलाई शक्तिशाली तुल्याउनेछौं तथा तिमीहरू दुबैलाई हामी शक्ति प्रदान गर्नेछौं, अत: तिनीहरू तिमीहरूसमक्ष पुग्न सक्नेछैनन् । तिमीहरू

हाम्रा चिह्नहरूका साथ (जाऊ) । तिमीहरू दुबैजना र तिमीहरूका अनुयायीहरू अवश्य विजयी हुनेछौ ।

३७. तथा जब मूसा हाम्रा स्पष्ट चिह्नहरूका साथ तिनीहरूसमक्ष आए, तिनीहरूले भने, "यो ता केवल एउटा जादुको कौशल हो, तथा हाम्रा पुर्खाहरूबाट हामीले कदापि यस्ता (प्रकारका) कुराहरू सुनेका थिएनौं ।"

فَلَمَّا جَآءَهُمْ مُّوْسٰى بِاٰيٰتِنَا بَيِّنٰتٍ قَالُوْا مَا هٰذَآ اِلَّا سِحْرٌ مُّفْتَرًى وَّ مَا سَمِعْنَا بِهٰذَا فِيْٓ اٰبَآئِنَا الْاَوَّلِيْنَ ﴿٣٦﴾

३८. (मूसाले) भने, मेरा प्रभुले त्यस व्यक्तिलाई राम्ररी जान्दछन्, जसले उनका जुनाफबाट मार्गदर्शन लिएर आएको छ तथा त्यसलाई (पनि) जसको प्रतिदानस्वरूप (अन्तिम) घर रहेको छ । वस्तुतः अत्याचारी व्यक्तिहरू कदापि कृतार्थ हुन सक्दैनन् ।"

وَ قَالَ مُوْسٰى رَبِّيْٓ اَعْلَمُ بِمَنْ جَآءَ بِالْهُدٰى مِنْ عِنْدِهٖ وَ مَنْ تَكُوْنُ لَهٗ عَاقِبَةُ الدَّارِ ؕ اِنَّهٗ لَا يُفْلِحُ الظّٰلِمُوْنَ ﴿٣٧﴾

३९. तथा फिरौनले भन्यो, "ए मुखियाहरू हो, तिमीहरूका निम्ति मबाहेक अन्य कोही उपास्य रहेको म देख्दिन, त्यसकारण ए हामान, मेरा निम्ति हिलो माटो(का इँटा) पोल र एउटा दुर्ग बनाउ, ताकि म (त्यसमा चढेर) मूसाको प्रतिपालकलाई एकझलक देख्न सकुँ, यद्यपि म उसलाई मिथ्यावादी व्यक्तिहरूमध्ये एक (रहेको) विश्वास गर्छु ।"

وَ قَالَ فِرْعَوْنُ يٰٓاَيُّهَا الْمَلَاُ مَا عَلِمْتُ لَكُمْ مِّنْ اِلٰهٍ غَيْرِيْ ۚ فَاَوْقِدْ لِيْ يٰهَامٰنُ عَلَى الطِّيْنِ فَاجْعَلْ لِّيْ صَرْحًا لَّعَلِّيْٓ اَطَّلِعُ اِلٰٓى اِلٰهِ مُوْسٰى ۙ وَ اِنِّيْ لَاَظُنُّهٗ مِنَ الْكٰذِبِيْنَ ﴿٣٨﴾

४०. तथा उसले र उसका लावालस्करले पृथ्वीमा अनाहक अहङ्कारपूर्ण व्यवहार गरे । तथा तिनीहरूलाई कदापि हामीसमक्ष फर्काएर ल्याइनेछैन भन्ने तिनीहरूको धारणा थियो ।

وَ اسْتَكْبَرَ هُوَ وَ جُنُوْدُهٗ فِي الْاَرْضِ بِغَيْرِ الْحَقِّ وَ ظَنُّوْٓا اَنَّهُمْ اِلَيْنَا لَا يُرْجَعُوْنَ ﴿٣٩﴾

४१. त्यसकारण हामीले उसलाई र उसका लस्करलाई समात्यौं र तिनीहरूलाई समुद्रमा फ्याँकिदियौं । अतः हेर, अत्याचारी व्यक्तिहरूको परिणाम कस्तो (नराम्रो) भएको

فَاَخَذْنٰهُ وَ جُنُوْدَهٗ فَنَبَذْنٰهُمْ فِي الْيَمِّ ۚ فَانْظُرْ كَيْفَ كَانَ عَاقِبَةُ الظّٰلِمِيْنَ ﴿٤٠﴾

थियो !

४२. तथा तिनीहरूलाई हामीले नेताहरू बनएका थियौं (फलस्वरूप) तिनीहरू (मानिसहरूलाई) अग्नितर्फ बोलाउने गर्थे; तथा पुनरुत्थानका दिन तिनीहरूलाई कुनै प्रकारको सहयोग प्राप्त हुनेछैन ।

وَجَعَلْنٰهُمْ اَئِمَّةً يَّدْعُوْنَ اِلَى النَّارِ ۚ
وَيَوْمَ الْقِيٰمَةِ لَا يُنْصَرُوْنَ ﴿٤١﴾

४३. तथा यस संसारमा हामीले तिनीहरूलाई अभिशापग्रस्त तुल्यायौं, तथा पुनरुत्थानका दिन तिनीहरू (सबै प्रकारका) भलाइबाट वञ्चित रहनेछन् ।

وَاَتْبَعْنٰهُمْ فِيْ هٰذِهِ الدُّنْيَا لَعْنَةً ۚ
وَيَوْمَ الْقِيٰمَةِ هُمْ مِّنَ الْمَقْبُوْحِيْنَ ﴿٤٢﴾

४४. तथा पहिलाका मानिसहरूलाई विनाश गरे पश्चात् हामीले मूसालाई (यस्तो) पुस्तक प्रदान गऱ्यौं (जुन) मानिसहरूका निम्ति प्रकाश प्राप्तिको साधनस्वरूप, तथा मार्गदर्शन र करुणास्वरूप थियो, ताकि तिनीहरूले उपदेश प्राप्त गरून् ।

وَلَقَدْ اٰتَيْنَا مُوْسَى الْكِتٰبَ مِنْۢ بَعْدِ
مَآ اَهْلَكْنَا الْقُرُوْنَ الْاُوْلٰى بَصَآئِرَ
لِلنَّاسِ وَهُدًى وَّرَحْمَةً لَّعَلَّهُمْ
يَتَذَكَّرُوْنَ ﴿٤٣﴾

४५. तथा जब हामीले मूसाप्रति आकाशवाणीद्वारा निर्देशन अवतीर्ण गरेका थियौं, तिमी त्यससमय (त्यस पर्वतको) पश्चिमतर्फ उपस्थित थिएनौ, न त तिमी साक्षीहरूमा (सामेल) थियौ ।

وَمَا كُنْتَ بِجَانِبِ الْغَرْبِيِّ اِذْ
قَضَيْنَآ اِلٰى مُوْسَى الْاَمْرَ وَمَا كُنْتَ
مِنَ الشّٰهِدِيْنَ ﴿٤٤﴾

४६. परन्तु (मूसापछि) हामीले धेरै पुस्ताहरूको उत्थान गऱ्यौं, तथा तिनीहरूको जीवनकाल लामो हुन गयो । तथा तिमी मिद्यानवासीहरूसित रहेर तिनीहरूलाई हाम्रा निर्देशनहरू पाठ गरेर सुनाउँदैनथ्यौ, अपितु हामी नै सन्देशवाहकहरू पठाउँदै आएका छौं ।

وَلٰكِنَّآ اَنْشَاْنَا قُرُوْنًا فَتَطَاوَلَ
عَلَيْهِمُ الْعُمُرُ ۚ وَمَا كُنْتَ ثَاوِيًا
فِيْٓ اَهْلِ مَدْيَنَ تَتْلُوْا عَلَيْهِمْ
اٰيٰتِنَا ۙ وَلٰكِنَّا كُنَّا مُرْسِلِيْنَ ﴿٤٥﴾

४७. तथा जब हामीले पुकारेका थियौं, त्यससमय तिमी त्यस पर्वतको छेउमा थिएनौ । परन्तु हामीले तिमीलाई) तिम्रा प्रतिपालकको करुणा(स्वरूप पठाएका हौं), ताकि तिमी ती मानिसहरूलाई सावधान गर

وَمَا كُنْتَ بِجَانِبِ الطُّوْرِ اِذْ نَادَيْنَا
وَلٰكِنْ رَّحْمَةً مِّنْ رَّبِّكَ لِتُنْذِرَ
قَوْمًا مَّآ اَتٰىهُمْ مِّنْ نَّذِيْرٍ مِّنْ
قَبْلِكَ لَعَلَّهُمْ يَتَذَكَّرُوْنَ ﴿٤٦﴾

जसतर्फ तिमीभन्दा पहिला कुनै सावधानकर्ता आएको थिएन, ताकि तिनीहरूले उपदेश ग्रहण गरून् ।

४८. तथा तिनीहरूको आफ्नै कर्मको फलस्वरूप जब तिनीहरूमाथि कुनै सङ्कट आइलाग्छ (तब) 'हे हाम्रा प्रतिपालक, तिमीले हामीतर्फ आफ्ना सन्देशवाहक किन पठाएनौ ताकि हामी तिम्रा निर्देशनहरूको अनुसरण गर्ने थियौं र हामी विश्वासीजनमा सामेल हुने थियौं' भनी तिनीहरू किन भन्दैनन्* ।

وَلَوْلَآ اَنْ تُصِيْبَهُمْ مُّصِيْبَةٌۢ بِمَا قَدَّمَتْ اَيْدِيْهِمْ فَيَقُوْلُوْا رَبَّنَا لَوْلَآ اَرْسَلْتَ اِلَيْنَا رَسُوْلًا فَنَتَّبِعَ اٰيٰتِكَ وَنَكُوْنَ مِنَ الْمُؤْمِنِيْنَ ﴿٤٧﴾

४९. परन्तु जब हाम्रातर्फबाट तिनीहरूसमक्ष सत्यको आगमन भयो (तब) तिनीहरूले भने, "जुन कुरा मूसालाई प्रदान गरिएको थियो त्यस्तै कुरा किन प्रदान गरिएन त?" जुन कुरा मूसालाई प्रदान गरिएको थियो के तिनीहरूले यसअघि त्यसलाई' दुबै (केवल) परस्पर एकअर्काका सहयोगी जादुगर हुन्' भनी अस्वीकार गरेका थिएनन् र? तथा तिनीहरूले भनेका थिए, "हामी तिनीहरू सबैलाई पूर्णतया अस्वीकार गर्छौं** ।"

فَلَمَّا جَآءَهُمُ الْحَقُّ مِنْ عِنْدِنَا قَالُوْا لَوْلَآ اُوْتِيَ مِثْلَ مَآ اُوْتِيَ مُوْسٰى ۚ اَوَلَمْ يَكْفُرُوْا بِمَآ اُوْتِيَ مُوْسٰى مِنْ قَبْلُ ۚ قَالُوْا سِحْرٰنِ تَظٰهَرَا ۗ وَقَالُوْٓا اِنَّا بِكُلٍّ كٰفِرُوْنَ ﴿٤٨﴾

* टिप्पणी: उक्त प्रश्नको उत्तर साङ्केतिक रहेको छ । तथा तिनीहरूले अल्लाहमाथि आरोप लगाउन नसक्नुको कारण के हो भने, प्रतिपालकले (अल्लाहले) सदा मानिसहरूतर्फ तिनीहरूका कुकर्महरूका कारण तिनीहरूलाई दण्ड दिनुभन्दा पहिला सचेतकहरू पठाउने गर्छन् (हेर्नुहोस परिच्छेद ६ आयत १३२) ।

** टिप्पणी: इस्लामका तीन प्रमुख विरोधीहरू– यहुदीहरू, इसाईहरू, तथा मूर्तिपुजकहरू हुन्– उक्त आयतमा यहुदीहरूलाई सम्बोधन गरिएको छ । त्यो बयान केवल यहुदीहरूद्वारा दिइएको हुन सक्छ । तिनीहरूले पहिला मूसालाई प्रदान गरिएका कुराहरूको अस्वीकार गरेका थिए भनी जब पवित्र कुरानले भनिरहेछ भने, इस्लामका पवित्र नबीका समयका मानिसहरूले मूसालाई अस्वीकार गरेका थिए भन्ने यसको तात्पर्य हुनै सक्दैन । उक्त आयतअन्तर्गत (हामी तिनीहरू सबैलाई पूर्णतया: अस्वीकार गर्छौं) भन्नुको तात्पर्य पनि 'हामी ती सबै बनाम चिह्नहरूका साथ अल्लाहको नाममा आउने व्यक्तिहरूलाई अस्वीकार गर्छौं' नै रहेको छ । आ-आफ्ना

५०. तिमी भन, "त्यसो भए, यदि तिमीहरू साँचा हौ भने (ती) दुबै (तौरात र कुरान) भन्दा कुनै उत्तम मार्गदर्शक पुस्तक अल्लाहका जुनाफबाट ल्याऊ, ताकि म त्यसको अनुसरण गरुँ ।"

قُلْ فَأْتُوا بِكِتَابٍ مِّنْ عِندِ اللَّهِ هُوَ أَهْدَىٰ مِنْهُمَا أَتَّبِعْهُ إِن كُنتُمْ صَادِقِينَ ﴿٥٠﴾

५१. परन्तु यदि तिनीहरूले तिमीलाई केही उत्तर दिएनन् भने, तिनीहरू केवल आफ्ना कु-अभिलाषाहरूका अनुयायी हुन् भनी जान । तथा जसले अल्लाहको मार्गदर्शनबिना आफ्नै कु-अभिलाषाहरूको अनुसरण गर्छ, त्यो व्यक्तिभन्दा अधिक पथभ्रष्ट व्यक्ति अन्य को हुन सक्छ र? वस्तुत: अल्लाहले अत्याचारी व्यक्तिहरूलाई मार्ग देखाउँदैनन् ।

فَإِن لَّمْ يَسْتَجِيبُوا لَكَ فَاعْلَمْ أَنَّمَا يَتَّبِعُونَ أَهْوَاءَهُمْ ۚ وَمَنْ أَضَلُّ مِمَّنِ اتَّبَعَ هَوَاهُ بِغَيْرِ هُدًى مِّنَ اللَّهِ ۚ إِنَّ اللَّهَ لَا يَهْدِي الْقَوْمَ الظَّالِمِينَ ﴿٥١﴾

५२. तथा हामीले तिनीहरूसमक्ष पूर्णरूपमा (बारम्बार आकाश) वाणी पुऱ्याएका छौं, ताकि तिनीहरूले उपदेश ग्रहण गरून् ।

وَلَقَدْ وَصَّلْنَا لَهُمُ الْقَوْلَ لَعَلَّهُمْ يَتَذَكَّرُونَ ﴿٥٢﴾

५३. यसअघि जसलाई हामीले पुस्तक प्रदान गरेका थियौं– तिनीहरूमध्यं धेरै व्यक्तिहरू यसप्रति विश्वास गर्छन्,

الَّذِينَ آتَيْنَاهُمُ الْكِتَابَ مِن قَبْلِهِ هُم بِهِ يُؤْمِنُونَ ﴿٥٣﴾

५४. तथा जब तिनीहरूसमक्ष यसको पाठ गरिन्छ, तिनीहरू के भन्छन् भने, "हामी यसप्रति विश्वास गर्छौं । वास्तवमा यो हाम्रा प्रतिपालकका तर्फबाट आएको सत्य हो । हामी ता यसअघि नै (अल्लाहका) आज्ञाकारी भइसकेका थियौं ।"

وَإِذَا يُتْلَىٰ عَلَيْهِمْ قَالُوا آمَنَّا بِهِ إِنَّهُ الْحَقُّ مِن رَّبِّنَا إِنَّا كُنَّا مِن قَبْلِهِ مُسْلِمِينَ ﴿٥٤﴾

५५. यी व्यक्तिहरूलाई तिनीहरूको प्रतिदान दुइपटक प्राप्त हुनेछ । कारण तिनीहरू धैर्यधारण गर्ने गर्छन् र तिनीहरू उत्तम कार्यद्वारा -गुणद्वारा) अपकर्म (अवगुण)लाई मेटाउने गर्छन् तथा हामीले

أُولَٰئِكَ يُؤْتَوْنَ أَجْرَهُم مَّرَّتَيْنِ بِمَا صَبَرُوا وَيَدْرَءُونَ بِالْحَسَنَةِ السَّيِّئَةَ وَمِمَّا رَزَقْنَاهُمْ يُنفِقُونَ ﴿٥٥﴾

---

समयका नबीलाई अस्वीकार गर्ने व्यक्तिहरू त्यही लक्ष अर्थात् रोगका सहभागी रहेका थिए ।

प्रदान गरेका वस्तुहरूबाट (अल्लाहका मार्गमा) खर्च गर्ने गर्छन् ।

५६. तथा जब तिनीहरू व्यर्थ कुरा सुन्छन् त्यसबाट मुख हटाउँदै के भन्छन् भने, "हाम्रा कार्यहरू हाम्रै निम्ति हुन् र तिमीहरूका कार्यहरू तिमीहरूकै निम्ति । तिमीहरूलाई शान्ति प्राप्त होस् । हामी मूर्खहरूको चाहना राख्दैनौं ।"

وَاِذَا سَمِعُوا اللَّغْوَ اَعْرَضُوْا عَنْهُ وَقَالُوْا لَنَآ اَعْمَالُنَا وَلَكُمْ اَعْمَالُكُمْ ز سَلٰمٌ عَلَيْكُمْ ز لَا نَبْتَغِى الْجٰهِلِيْنَ ﴿٥٥﴾

५७. तिमीले जस जसलाई मन पराउँछौ (ती सबैलाई) निश्चय नै तिमी सन्मार्गमा डोऱ्याउन सक्नेछैनौं, परन्तु जसलाई अल्लाहले इच्छा गर्छन् उनले तिनीहरूलाई सन्मार्गमा हिँडाउँछन्, तथा मार्ग दर्शन स्वीकार गर्ने व्यक्तिहरूलाई उनले राम्ररी जान्दछन् ।

اِنَّكَ لَا تَهْدِيْ مَنْ اَحْبَبْتَ وَلٰكِنَّ اللّٰهَ يَهْدِيْ مَنْ يَّشَآءُ ج وَهُوَ اَعْلَمُ بِالْمُهْتَدِيْنَ ﴿٥٦﴾

५८. तथा तिनीहरू भन्छन्, यदि हामीले तिम्रो मार्गदर्शनको अनुसरण गरेमा हामीलाई आफ्नो भूमिबाट बलपूर्वक निष्कासित गरिनेछ ।" के हामीले तिनीहरूका निम्ति एउटा यस्तो सुरक्षित स्थान निर्माण गरेकाछैनौं, जसमा हाम्रा तर्फबाट जीविकास्वरूप हरप्रकारका फलहरू उपलब्ध गराइएको छ? परन्तु तिनीहरूमध्ये अधिकतर व्यक्तिहरू केही जान्दैनन् ।

وَقَالُوْٓا اِنْ نَّتَّبِعِ الْهُدٰى مَعَكَ نُتَخَطَّفْ مِنْ اَرْضِنَا ط اَوَلَمْ نُمَكِّنْ لَّهُمْ حَرَمًا اٰمِنًا يُّجْبٰٓى اِلَيْهِ ثَمَرٰتُ كُلِّ شَيْءٍ رِّزْقًا مِّنْ لَّدُنَّا وَلٰكِنَّ اَكْثَرَهُمْ لَا يَعْلَمُوْنَ ﴿٥٧﴾

५९. तथा कति यस्ता नगर(वासी)हरूलाई हामीले विनाश गऱ्यौं, जसलाई आफ्नो जीवन (यापनको तरिका)प्रति अति अहङ्कार थियो । तथा यी तिनीहरूका यस्ता निवासस्थानहरू हुन् जसमा तिनीहरू पछि अति थोरै बाहेक कोही निवासी शेष रहेनन् । तथा हामी नै (तिनका) उत्तराधिकारी भयौं

وَكَمْ اَهْلَكْنَا مِنْ قَرْيَةٍ بَطِرَتْ مَعِيْشَتَهَا ج فَتِلْكَ مَسٰكِنُهُمْ لَمْ تُسْكَنْ مِّنْ بَعْدِهِمْ اِلَّا قَلِيْلًا ط وَكُنَّا نَحْنُ الْوٰرِثِيْنَ ﴿٥٨﴾

६०. तथा तिम्रा प्रतिपालकले तबसम्म कुनै नगरलाई ध्वस्त पार्दैनन् जबसम्म उनी त्यसको मुख्य स्थानमा कुनै यस्ता

وَمَا كَانَ رَبُّكَ مُهْلِكَ الْقُرٰى حَتّٰى يَبْعَثَ فِيْٓ اُمِّهَا رَسُوْلًا يَّتْلُوْا

عَلَيْهِمْ اٰيٰتِنَا ۚ وَ مَا كُنَّا مُهْلِكِي الْقُرٰٓى اِلَّا وَ اَهْلُهَا ظٰلِمُوْنَ ۝٥٩

सन्देशवाहकलाई पठाउँदैनन् जसले तिनीहरूसमक्ष हाम्रा निर्देशनहरू पाठ गरेर सुनाउँछन्, न त हामी कुनै नगरलाई त्यहाँका निवासीहरू अत्याचारी हुनुअघि नै विनाश गर्ने गर्छौं ।

وَ مَآ اُوْتِيْتُمْ مِّنْ شَيْءٍ فَمَتَاعُ الْحَيٰوةِ الدُّنْيَا وَ زِيْنَتُهَا ۚ وَ مَا عِنْدَ اللّٰهِ خَيْرٌ وَّ اَبْقٰى ؕ اَفَلَا تَعْقِلُوْنَ ۝٦٠

६१. तथा (यस संसारका) तिमीहरूलाई प्रदान गरिएका सम्पूर्ण वस्तुहरू ता केवल यसै जीवनका अस्थायी सुखका साधनहरू र यसैका सौन्दर्यस्वरूप हुन्, तथा जुन कुरा अल्लाहका जुनाफमा रहेको छ, त्यो अधिक उत्तम र दीर्घस्थायी रहेको छ । अत: के तिमीहरू तैपनि बुझ्दैनौ त?

اَفَمَنْ وَّعَدْنٰهُ وَعْدًا حَسَنًا فَهُوَ لَاقِيْهِ كَمَنْ مَّتَّعْنٰهُ مَتَاعَ الْحَيٰوةِ الدُّنْيَا ثُمَّ هُوَ يَوْمَ الْقِيٰمَةِ مِنَ الْمُحْضَرِيْنَ ۝٦١

६२. अत: के त्यो व्यक्ति, जसलाई हामीले मङ्गल (प्राप्ति)को सत्यवचन दिइसकेका छौं र त्यो त्यसलाई अवश्यरूपमा मिल्नेछ, के त्यो व्यक्तिसदृश हुन सक्छ र, जसलाई हामीले केवल यसै संसारको सुखभोग दिएका छौं, र त्यो व्यक्ति ती व्यक्तिहरूमा सामेल हुनेछ, जसलाई पुनरुत्थानका दिन (अल्लाहका सामुन्ने सोधपुछका निम्ति) पेश गरिनेछ?

وَ يَوْمَ يُنَادِيْهِمْ فَيَقُوْلُ اَيْنَ شُرَكَآءِيَ الَّذِيْنَ كُنْتُمْ تَزْعُمُوْنَ ۝٦٢

६३. तथा त्यसदिन उनले तिनीहरूलाई बोलाएर के भन्नेछन् भने, "तिमीहरूले आफ्नो सोचाइअनुसार धारण गरेका ती मेरा भागीदारहरू कहाँ छन् त?"

قَالَ الَّذِيْنَ حَقَّ عَلَيْهِمُ الْقَوْلُ رَبَّنَا هٰٓؤُلَآءِ الَّذِيْنَ اَغْوَيْنَا ۚ اَغْوَيْنٰهُمْ كَمَا غَوَيْنَا ۚ تَبَرَّاْنَآ اِلَيْكَ ز مَا كَانُوْٓا اِيَّانَا يَعْبُدُوْنَ ۝٦٣

६४. जसका बारेमा हाम्रो वाणी पूर्ण हुनेछ, तिनीहरूले भन्नेछन्, "हे हाम्रा प्रतिपालक, यिनीहरू तिनै हुन्, जसलाई हामीले पथभ्रष्ट तुल्याएका थियौं । हामीले तिनीहरूलाई पथभ्रष्ट तुल्याउनका साथसाथ (स्वयम्) हामी पनि पथभ्रष्ट भएका थियौं । (अब) हामी
(तिनीहरूबाट आफ्नो) सम्बन्ध विच्छेद गरी तिमीतर्फ (फर्कन्छौं) । तिनीहरू ता हाम्रो

उपासना गर्दैनथे ।"

وَقِيلَ ادْعُوا شُرَكَاءَكُمْ فَدَعَوْهُمْ فَلَمْ يَسْتَجِيبُوا لَهُمْ وَرَأَوُا الْعَذَابَ ۚ لَوْ أَنَّهُمْ كَانُوا يَهْتَدُونَ ﴿٦٤﴾

६५. तथा के भनिनेछ भने, "तिमीहरू आफ्ना सहभागीहरूलाई बोलाऊ ।" तथा तिनीहरूले उनीहरूलाई पुकार्ने छन्, परन्तु उनीहरूले तिनीहरूलाई उत्तर दिनेछैनन् । तथा तिनीहरूले दण्ड देख्नेछन् । तिनीहरूले यदि मार्गदर्शनको अनुसरण गरेका भए !

وَيَوْمَ يُنَادِيهِمْ فَيَقُولُ مَاذَا أَجَبْتُمُ الْمُرْسَلِينَ ﴿٦٥﴾

६६. तथा त्यसदिन उनले तिनीहरूलाई बोलाएर सोध्नेछन्, "तिमीहरूले सन्देशवाहकहरूलाई के जवाफ दिएका थियौ?"

فَعَمِيَتْ عَلَيْهِمُ الْأَنْبَاءُ يَوْمَئِذٍ فَهُمْ لَا يَتَسَاءَلُونَ ﴿٦٦﴾

६७. अतः त्यसदिन सबै मामिलाहरू तिनीहरूप्रति अस्पष्ट हुनेछन्, तथा तिनीहरूले एक अर्कालाई सोध्न (समेत) सक्नेछैनन् ।

فَأَمَّا مَنْ تَابَ وَآمَنَ وَعَمِلَ صَالِحًا فَعَسَىٰ أَنْ يَكُونَ مِنَ الْمُفْلِحِينَ ﴿٦٧﴾

६८. परन्तु जसले प्रायश्चित गर्छ र विश्वास स्थापना गर्छ तथा पुण्यकर्म गर्ने गर्छ, त्यो व्यक्ति सम्भवतः कृतार्थ हुने व्यक्तिहरूमा सामेल हुनेछ ।

وَرَبُّكَ يَخْلُقُ مَا يَشَاءُ وَيَخْتَارُ ۗ مَا كَانَ لَهُمُ الْخِيَرَةُ ۚ سُبْحَانَ اللَّهِ وَتَعَالَىٰ عَمَّا يُشْرِكُونَ ﴿٦٨﴾

६९. तथा तिम्रा प्रतिपालकले जे इच्छा गर्छन् त्यो सृष्टि गर्छन् र (जसलाई इच्छा गर्छन्) त्यसलाई चयन गर्छन् । कसैलाई चयन गर्नु तिनीहरूको कार्य होइन । अल्लाह पवित्र छन्, तथा जसलाई तिनीहरू (उनका) सहभागी बनाउँछन् ती सबैभन्दा अल्लाह अति उच्च रहेका छन् ।

وَرَبُّكَ يَعْلَمُ مَا تُكِنُّ صُدُورُهُمْ وَمَا يُعْلِنُونَ ﴿٦٩﴾

७०. तथा तिनीहरूका छातीभित्र लुकेका कुराहरूलाई र तिनीहरूले प्रकट गर्ने गरेका कुराहरूलाई तिम्रा प्रतिपालकले जान्दछन् ।

وَهُوَ اللَّهُ لَا إِلَٰهَ إِلَّا هُوَ ۖ لَهُ الْحَمْدُ فِي الْأُولَىٰ وَالْآخِرَةِ ۖ وَلَهُ الْحُكْمُ وَإِلَيْهِ تُرْجَعُونَ ﴿٧٠﴾

७१. तथा अल्लाह उनै हुन्, जसबाहेक कोही उपास्य छैन । प्रारम्भमा पनि उनी नै सम्पूर्ण प्रशंसाका योग्य थिए र परलोकमा

पनि उनी नै हुनेछन् । निर्णय (गर्नु) उनकै (अधिकार) रहेको छ, तथा उनैतर्फ तिमीहरूलाई फर्काएर लगिनेछ ।

७२. तिमी भन, "तिमीहरू मलाई भन, "यदि अल्लाहले रात्रिलाई तिमीहरूमाथि कयामत (पुनरुत्थान)का दिनसम्म (निरन्तर) लम्ब्याइ दिएमा अल्लाहलाई छाडी को त्यस्तो देवता (उपास्य) रहेको छ, जसले तिमीहरूका निम्ति प्रकाश ल्याउन सक्छ? तथापि के तिमीहरू सुन्दैनौ त?"

قُلْ اَرَءَيْتُمْ اِنْ جَعَلَ اللّٰهُ عَلَيْكُمُ الَّيْلَ سَرْمَدًا اِلٰى يَوْمِ الْقِيٰمَةِ مَنْ اِلٰهٌ غَيْرُ اللّٰهِ يَاْتِيْكُمْ بِضِيَآءٍ ؕ اَفَلَا تَسْمَعُوْنَ ﴿٧١﴾

७३. तिमी भन, "तिमीहरू मलाई भन, यदि अल्लाहले दिनलाई तिमीहरूमाथि पुनरुत्थानका दिनसम्म (निरन्तर) लम्ब्याएमा, अल्लाहलाई छाडी त्यस्तो को देवता (उपास्य) रहेको छ, जसले तिमीहरूको विश्रामका निम्ति तिमीहरूसमक्ष रात्रिलाई ल्याउन सक्छ? तथापि के तिमीहरू देख्दैनौ त?"

قُلْ اَرَءَيْتُمْ اِنْ جَعَلَ اللّٰهُ عَلَيْكُمُ النَّهَارَ سَرْمَدًا اِلٰى يَوْمِ الْقِيٰمَةِ مَنْ اِلٰهٌ غَيْرُ اللّٰهِ يَاْتِيْكُمْ بِلَيْلٍ تَسْكُنُوْنَ فِيْهِ ؕ اَفَلَا تُبْصِرُوْنَ ﴿٧٢﴾

७४. तथा उनले आफ्नै कृपाद्वारा तिमीहरूका निम्ति रात र दिन बनाए, ताकि त्यसमा तिमीहरू विश्राम गर, तथा तिमीहरू त्यसमा उनको अनुग्रह प्राप्तिको चेष्टा गर, तथा तिमीहरू कृतज्ञ बन ।

وَ مِنْ رَّحْمَتِهٖ جَعَلَ لَكُمُ الَّيْلَ وَ النَّهَارَ لِتَسْكُنُوْا فِيْهِ وَ لِتَبْتَغُوْا مِنْ فَضْلِهٖ وَ لَعَلَّكُمْ تَشْكُرُوْنَ ﴿٧٣﴾

७५. तथा त्यसदिन उनले तिनीहरूलाई बोलाएर भन्नेछन्, "तिमीहरूका कपोल-कल्पित ती मेरा 'भागीदारहरू' कहाँ छन्?"

وَ يَوْمَ يُنَادِيْهِمْ فَيَقُوْلُ اَيْنَ شُرَكَآءِيَ الَّذِيْنَ كُنْتُمْ تَزْعُمُوْنَ ﴿٧٤﴾

७६. तथा हरेक जातिबाट हामी एउटा एउटा साक्षी चुनेर खडा गर्नेछौं तथा हामी भन्नेछौं, "तिमीहरू आफ्नो प्रमाण प्रस्तुत गर ।" तब तिनीहरूले प्रकृत सत्य अल्लाहकै जुनाफमा रहेको छ भनी जान्नेछन् । तथा तिनीहरूले गढ्ने गरेका सबै कुरहरू तिनीहरूबाट विलोप हुन

وَ نَزَعْنَا مِنْ كُلِّ اُمَّةٍ شَهِيْدًا فَقُلْنَا هَاتُوْا بُرْهَانَكُمْ فَعَلِمُوْۤا اَنَّ الْحَقَّ لِلّٰهِ وَ ضَلَّ عَنْهُمْ مَّا كَانُوْا يَفْتَرُوْنَ ﴿٧٥﴾

पुग्नेछन् ।

७७. कारुन् (कोरा) वस्तुतः मूसाका जातिकै मानिस थियौं, परन्तु त्यसले उनीहरूविरुद्धै अत्याचारपूर्ण व्यवहार गर्थ्यो । हामीले उसलाई यति अधिक धनको खजाना प्रदान गरेका थियौं, जसका चाबीहरूको भार बहन गर्न एउटा सशक्त (मानिसहरूको) जमातलाई समेत गाह्रो पर्थ्यो । जब उसका जातिका मानिसहरूले उसलाई भने, "तिमी अहङ्कार नगर, जसले अहङ्कार गर्छन् अल्लाहले कदापि तिनीहरूलाई मन पराउँदैनन् ।

إِنَّ قَارُونَ كَانَ مِنْ قَوْمِ مُوسَىٰ فَبَغَىٰ
عَلَيْهِمْ ۖ وَآتَيْنَاهُ مِنَ الْكُنُوزِ مَا إِنَّ
مَفَاتِحَهُ لَتَنُوءُ بِالْعُصْبَةِ أُولِي
الْقُوَّةِ إِذْ قَالَ لَهُ قَوْمُهُ لَا تَفْرَحْ ۖ
إِنَّ اللَّهَ لَا يُحِبُّ الْفَرِحِينَ ﴿٧٦﴾

७८. तथा अल्लाहले तिमीलाई प्रदान गरेका (वस्तुहरू)द्वारा परलोकको घर प्राप्त गर्ने इच्छा गर, तथा तिमी आफ्नो सांसारिक अंशलाई (पनि) नभुल । तथा जसरी अल्लाहले तिमीमाथि उपकार गरेका छन् त्यसरी नै तिमी पनि (मानिसहरूमाथि) उपकार गर, तथा देशमा अशान्ति सिर्जना गर्ने प्रचेष्टा नगर, वास्तवमा अशान्ति सिर्जना गर्ने व्यक्तिहरूलाई अल्लाहले मन पराउँदैनन् ।"

وَابْتَغِ فِيمَا آتَاكَ اللَّهُ الدَّارَ الْآخِرَةَ ۖ
وَلَا تَنسَ نَصِيبَكَ مِنَ الدُّنْيَا ۖ وَ
أَحْسِن كَمَا أَحْسَنَ اللَّهُ إِلَيْكَ ۖ وَلَا تَبْغِ
الْفَسَادَ فِي الْأَرْضِ ۖ إِنَّ اللَّهَ لَا يُحِبُّ
الْمُفْسِدِينَ ﴿٧٧﴾

७९. उसले भन्यो, "मेरो विशेष ज्ञानका कारण यो मलाई प्रदान गरिएको हो ।" अल्लाहले उभन्दा पहिलाका यस्ता कतिपय पुस्ताहरूलाई विनास गरेका थिए, जो उ भन्दा सङ्ख्यामा अधिक शक्तिशाली थिए भन्ने कुराको उसलाई ज्ञान थिएन र? तथा अपराधी व्यक्तिहरूसित तिनीहरूका पापको (विस्तृत विवरण) लिइनेछैन ।

قَالَ إِنَّمَا أُوتِيتُهُ عَلَىٰ عِلْمٍ عِندِي ۚ
أَوَلَمْ يَعْلَمْ أَنَّ اللَّهَ قَدْ أَهْلَكَ مِن
قَبْلِهِ مِنَ الْقُرُونِ مَنْ هُوَ أَشَدُّ مِنْهُ
قُوَّةً وَأَكْثَرُ جَمْعًا ۚ وَلَا يُسْأَلُ عَن
ذُنُوبِهِمُ الْمُجْرِمُونَ ﴿٧٨﴾

८०. अतः त्यो व्यक्ति -एकदिन) आफ्ना *मानिसहरूसमक्ष* आफ्नो आडम्बरका साथ गयो । तब यस संसारको सुखभोग चाहने व्यक्तिहरूले भने, "हाय ! कारुनलाई जुन वस्तुहरू प्रदान गरिएका छन्, त्यस्तै

فَخَرَجَ عَلَىٰ قَوْمِهِ فِي زِينَتِهِ ۖ قَالَ
الَّذِينَ يُرِيدُونَ الْحَيَاةَ الدُّنْيَا

يٰلَيْتَ لَنَا مِثْلَ مَآ أُوْتِيَ قَارُوْنُ ۙ إِنَّهٗ لَذُوْ حَظٍّ عَظِيْمٍ ﴿٧٩﴾

वस्तुहरू हामीलाई पनि प्राप्त भएका भए ! साँच्चै नै त्यो ता ठूलो भाग्यशाली व्यक्ति रहेछ ।"

وَقَالَ الَّذِيْنَ أُوْتُوا الْعِلْمَ وَيْلَكُمْ ثَوَابُ اللّٰهِ خَيْرٌ لِّمَنْ اٰمَنَ وَعَمِلَ صَالِحًا ۚ وَلَا يُلَقّٰىهَآ إِلَّا الصّٰبِرُوْنَ ﴿٨٠﴾

८१. परन्तु जसलाई ज्ञान प्रदान गरिएको थियो तिनीहरूले भने, "तिमीहरूमाथि धिक्कार छ, जसले विश्वास गर्छन् र पुण्यकार्य गर्छन्, तिनीहरूका निम्ति ता अल्लाहको प्रतिदान सर्वोत्तम रहेको छ, तथा केवल धैर्यधारी व्यक्तिहरूलाई मात्र त्यो कुरा प्राप्त हुन सक्नेछ ।"

فَخَسَفْنَا بِهٖ وَبِدَارِهِ الْأَرْضَ ۗ فَمَا كَانَ لَهٗ مِنْ فِئَةٍ يَّنْصُرُوْنَهٗ مِنْ دُوْنِ اللّٰهِ ۖ وَمَا كَانَ مِنَ الْمُنْتَصِرِيْنَ ﴿٨١﴾

८२. त्यसपछि हामीले कारुनलाई उसको घर-गृहस्थीका साथ पृथ्वीमा धसायौं, तथा अल्लाहविरुद्ध उसलाई सहयोग गर्ने उसको कुनै जमात थिएन, न त उ (अल्लाहको निर्णयविरुद्ध) विजय प्राप्त गर्ने व्यक्तिहरूमध्ये को हुन सक्यो ।

وَأَصْبَحَ الَّذِيْنَ تَمَنَّوْا مَكَانَهٗ بِالْأَمْسِ يَقُوْلُوْنَ وَيْكَأَنَّ اللّٰهَ يَبْسُطُ الرِّزْقَ لِمَنْ يَّشَآءُ مِنْ عِبَادِهٖ وَيَقْدِرُ ۚ لَوْلَآ أَنْ مَّنَّ اللّٰهُ عَلَيْنَا لَخَسَفَ بِنَا ۖ وَيْكَأَنَّهٗ لَا يُفْلِحُ الْكٰفِرُوْنَ ﴿٨٢﴾

८३. तथा जुन व्यक्तिहरू अघिल्लो दिनसम्म उसलाई प्राप्त स्थानप्रति लालायित थिए, तिनीहरू के भन्न लागे भने, "धिक्कार छ ! ती अल्लाह नै हुन्, जसले आफ्ना भृत्यहरूमध्ये तिनीहरूका निम्ति जीविकामा प्रचुरता प्रदान गर्छन् जसलाई उनले चाहन्छन् तथा (जसका निम्ति उनले चाहन्छन् त्यसलाई) सङ्कीर्ण तुल्याउँछन् । अल्लाहले यदि हामीमाथि अनुग्रह नगरेका भएता उनले अवश्य हामीलाई (पनि) त्यसमा धसाउने थिए । धिक्कार छ ! अकृतज्ञ व्यक्तिहरू कदापि कृतार्थ हुन सक्दैनन् ।"

تِلْكَ الدَّارُ الْاٰخِرَةُ نَجْعَلُهَا لِلَّذِيْنَ لَا يُرِيْدُوْنَ عُلُوًّا فِي الْأَرْضِ وَلَا فَسَادًا ۚ وَالْعَاقِبَةُ لِلْمُتَّقِيْنَ ﴿٨٣﴾

८४. यो परलोकको घर (जुन) छ त्यो ता हामी तिनै व्यक्तिहरूलाई प्रदान गर्छौं जसले पृथ्वीमा आत्मभिमान र भ्रष्टाचारको कामना गर्दैनन् । तथा परिणाम ता सत्यनिष्ठ व्यक्तिहरूकै (उत्तम) हुन्छ ।

مَنْ جَآءَ بِالْحَسَنَةِ فَلَهٗ خَيْرٌ مِّنْهَا ۚ وَمَنْ جَآءَ بِالسَّيِّئَةِ فَلَا يُجْزَى الَّذِيْنَ عَمِلُوا السَّيِّاٰتِ اِلَّا مَا كَانُوْا يَعْمَلُوْنَ ﴿٨٥﴾

८५. जसले कुनै उत्तम कार्य गर्छ त्यसलाई त्यो कार्यभन्दा उत्तम प्रतिदान प्राप्त हुनेछ, तथा जसले कुनै दुष्कार्य गर्छ (त्यसलाई भने)–(अर्थात्) जुन व्यक्तिहरूले दुष्कार्य गर्ने गर्छन् तिनीहरूलाई भने तिनले गरेका कार्यहरू (अनुसार नै) प्रतिदान प्रदान गरिनेछ

اِنَّ الَّذِيْ فَرَضَ عَلَيْكَ الْقُرْاٰنَ لَرَآدُّكَ اِلٰى مَعَادٍ ۚ قُلْ رَّبِّيْٓ اَعْلَمُ مَنْ جَآءَ بِالْهُدٰى وَمَنْ هُوَ فِيْ ضَلٰلٍ مُّبِيْنٍ ﴿٨٦﴾

८६. निश्चय नै, जसले तिमीप्रति कुरान (को शिक्षा) अनिवार्य गरे, उनैले तिमीलाई (तिम्रो) फर्कने स्थानतर्फ फर्काएर ल्याउनेछन् । तिमी भन, "मेरा प्रतिपालकले त्यस व्यक्तिलाई राम्ररी जान्दछन्, जसले सन्मार्ग अवलम्बन गर्छ र त्यसलाई पनि (जान्दछन्) जो स्पष्टरूपमा विपथगामी रहेको छ ।"

وَمَا كُنْتَ تَرْجُوْٓا اَنْ يُّلْقٰٓى اِلَيْكَ الْكِتٰبُ اِلَّا رَحْمَةً مِّنْ رَّبِّكَ فَلَا تَكُوْنَنَّ ظَهِيْرًا لِّلْكٰفِرِيْنَ ﴿٨٧﴾

८७. तथा तिमीमाथि पुस्तक अवतीर्ण गरिनेछ भन्ने आशा तिमी कदापि राख्दैनथ्यौ, परन्तु यो ता तिम्रा प्रतिपालकको एउटा दयास्वरुप हो, त्यसकारण तिमी कदापि अविश्वासी व्यक्तिहरूका सहयोगी नबन ।

وَلَا يَصُدُّنَّكَ عَنْ اٰيٰتِ اللّٰهِ بَعْدَ اِذْ اُنْزِلَتْ اِلَيْكَ وَادْعُ اِلٰى رَبِّكَ وَلَا تَكُوْنَنَّ مِنَ الْمُشْرِكِيْنَ ﴿٨٨﴾

८८. तथा तिमीप्रति अल्लाहका चिह्नहरू अवतीर्ण भए पश्चात् तिनीहरूले तिमीलाई तिनीहरूबाट (निर्देशनहरूबाट) विमुख नतुल्याऊन्, तथा तिमी (मानिसहरूलाई) आफ्ना प्रतिपालकतर्फ बोलाउ तथा जसले (उनका) भागीदार तुल्याउने गर्छन् तिमी तिनीहरूमा सामेल नहोऊ ।

وَلَا تَدْعُ مَعَ اللّٰهِ اِلٰهًا اٰخَرَ ۘ لَآ اِلٰهَ اِلَّا هُوَ ۚ كُلُّ شَيْءٍ هَالِكٌ اِلَّا وَجْهَهٗ ۚ لَهُ الْحُكْمُ وَاِلَيْهِ تُرْجَعُوْنَ ﴿٨٩﴾

८९. तथा अल्लाहलाई छाडी अन्य कुनै उपास्यलाई नपुकार । उनीबाहेक अन्य कोही उपास्य छैन । उनको प्रतापबाहेक अन्य सबै वस्तु नाशवान रहेका छन् । निर्णय उनकै (हातमा) रहेको छ, तथा तिमीहरू सबैलाई उनीतर्फै फर्काएर लगिनेछ ।



## अल्-अन्कबूत
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

الٓمّٓ ①

२. अलिफ लाम मिम[ञ]

اَحَسِبَ النَّاسُ اَنْ يُّتْرَكُوْٓا اَنْ يَّقُوْلُوْٓا اٰمَنَّا وَهُمْ لَا يُفْتَنُوْنَ ②

३. के "हामी विश्वास गर्छौं" भन्दैमा तिनीहरूलाई जाँच्दैनजाँचिकन छाडिदिइनेछ भनी मानिसहरूले ठानेका छन् त?

وَلَقَدْ فَتَنَّا الَّذِيْنَ مِنْ قَبْلِهِمْ فَلَيَعْلَمَنَّ اللّٰهُ الَّذِيْنَ صَدَقُوْا وَلَيَعْلَمَنَّ الْكٰذِبِيْنَ ③

४. तथा तिनीहरूभन्दा पहिलाका मानिसहरूलाई हामीले जाँचेका थियौं । अत: अल्लाहले अवश्य सत्यवादी व्यक्तिहरूलाई पृथक गर्नेछन् तथा उनले अवश्य मिथ्यावादी व्यक्तिहरूलाई पनि (सत्यवादी व्यक्तिहरूबाट) पृथक गर्नेछन् ।

اَمْ حَسِبَ الَّذِيْنَ يَعْمَلُوْنَ السَّيِّاٰتِ اَنْ يَّسْبِقُوْنَا ۭ سَاۗءَ مَا يَحْكُمُوْنَ ④

५. अथवा जसले दुष्कर्म गर्ने गर्छन्, के तिनीहरूले हामीबाट उम्कन सक्नेछन् भनी ठानेका छन्? तिनीहरूको निर्णय अति निकृष्ट रहेको छ ।

مَنْ كَانَ يَرْجُوْا لِقَاۗءَ اللّٰهِ فَاِنَّ اَجَلَ اللّٰهِ لَاٰتٍ ۭ وَهُوَ السَّمِيْعُ الْعَلِيْمُ ⑤

६. जसले अल्लाहसित साक्षात्कार गर्ने अभिलाषा राख्छ, (त्यसले त्यसको तयारी गरोस्), किनभने अल्लाहले निर्धारित गरेको समय निश्चयपूर्वक (निकट) आउँदैछ । तथा उनी नै सर्वस्रोता, सर्वज्ञ छन् ।

وَمَنْ جَاهَدَ فَاِنَّمَا يُجَاهِدُ لِنَفْسِهٖ ۭ اِنَّ اللّٰهَ لَغَنِيٌّ عَنِ الْعٰلَمِيْنَ ⑥

७. तथा जसले परिश्रम गर्छ त्यसले आफ्नै ज्यानका निम्ति गर्छ, अल्लाह ता वास्तवमा सम्पूर्ण विश्वब्रह्माण्डबाट स्वतन्त्र (अभावहीन) रहेका छन् ।

---

[ञ] **म अल्लाह सर्वज्ञान सम्पन्न**

وَالَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ لَنُكَفِّرَنَّ عَنْهُمْ سَيِّاٰتِهِمْ وَ لَنَجْزِيَنَّهُمْ اَحْسَنَ الَّذِيْ كَانُوْا يَعْمَلُوْنَ ﴿٨﴾

८. तथा जसले विश्वास गर्छन् र पुण्यकार्य गर्छन्, हामी अवश्य तिनीहरूको अवगुण मेटाउनेछौं, तथा तिनीहरूलाई हामी अवश्य तिनीहरूका कार्यहरूको उत्तम प्रतिदान प्रदान गर्नेछौं ।

وَوَصَّيْنَا الْاِنْسَانَ بِوَالِدَيْهِ حُسْنًا ؕ وَ اِنْ جَاهَدٰكَ لِتُشْرِكَ بِيْ مَا لَيْسَ لَكَ بِهٖ عِلْمٌ فَلَا تُطِعْهُمَا ؕ اِلَيَّ مَرْجِعُكُمْ فَاُنَبِّئُكُمْ بِمَا كُنْتُمْ تَعْمَلُوْنَ ﴿٩﴾

९. तथा मानिसलाई हामीले आफ्ना मातापितासित दयापूर्वक व्यवहार गर्न आदेश दिएका छौं, परन्तु यदि तिनीहरूले तिमीलाई (पनि) मेरा यस्ता भागीदार तुल्याउन जोड लगाएमा, जसबारे तिमीलाई कुनै ज्ञान प्राप्त छैन, त्यस अवस्थामा तिमी तिनीहरूको कुरो नमान । तिमीहरू सबैले मतर्फै फर्केर आउनुछ, तथा म तिमीहरूले गरेका कार्यहरूबारे तिमीहरूलाई अवगत गराउनेछु ।

وَالَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ لَنُدْخِلَنَّهُمْ فِي الصّٰلِحِيْنَ ﴿١٠﴾

१०. तथा जसले विश्वास गर्छन् र पुण्यकार्य गर्छन्– तिनीहरूलाई हामी अवश्य सत्यपरायण व्यक्तिहरू(को संगत) मा दाखिल गर्नेछौं ।

وَمِنَ النَّاسِ مَنْ يَّقُوْلُ اٰمَنَّا بِاللّٰهِ فَاِذَاۤ اُوْذِيَ فِي اللّٰهِ جَعَلَ فِتْنَةَ النَّاسِ كَعَذَابِ اللّٰهِ ؕ وَلَئِنْ جَآءَ نَصْرٌ مِّنْ رَّبِّكَ لَيَقُوْلُنَّ اِنَّا كُنَّا مَعَكُمْ ؕ اَوَلَيْسَ اللّٰهُ بِاَعْلَمَ بِمَا فِيْ صُدُوْرِ الْعٰلَمِيْنَ ﴿١١﴾

११. तथा मानिसहरूमा केही यस्ता व्यक्तिहरू (पनि) छन् जसले के भन्ने गर्छन् भने, "हामी अल्लाहप्रति विश्वास गर्छौं," परन्तु जब तिनीहरूलाई अल्लाहका मार्गमा दुःख दिइन्छ, (तब) मानिसहरूको उत्पीडनलाई तिनीहरू अल्लाहको दण्डतुल्य ठान्छन् । तथा यदि तिम्रा प्रतिपालकका तर्फबाट सहयोग आएमा, तिनीहरू निश्चयपूर्वक के भन्छन् भने, "निस्सन्देह, हामी ता तिमीहरूसितै थियौं ।" के अल्लाह सम्पूर्ण मानवजातिको अन्तरमा रहेका कुराहरूप्रति पूर्णविदित छैनन् र ?"

وَلَيَعْلَمَنَّ اللّٰهُ الَّذِيْنَ اٰمَنُوْا وَ لَيَعْلَمَنَّ الْمُنٰفِقِيْنَ ﴿١١﴾

१२. तथा अल्लाहले अवश्य नै विश्वासीजनलाई पृथक (गरेर) देखाउने छन्, तथा ढोंगीहरूलाई पनि उनले अवश्य नै (विश्वासीजनबाट) पृथक (गरेर)

देखाउने छन् ।

१३. तथा अविश्वासी व्यक्तिहरू विश्वासीजनसित के भन्छन् भने, "हाम्रो मार्ग अनुसरण गर, हामी अवश्य तिमीहरूको पापको भार उठाउनेछौं ।" वस्तुतः तिनीहरूले उनीहरूको पापको रत्तिभर (भार) उठाउन सक्नेछैनन् । तिनीहरू निश्चयपूर्वक मिथ्यावादी रहेका छन् ।

وَقَالَ الَّذِيْنَ كَفَرُوْا لِلَّذِيْنَ اٰمَنُوا اتَّبِعُوْا سَبِيْلَنَا وَلْنَحْمِلْ خَطٰيٰكُمْ ؕ وَمَا هُمْ بِحٰمِلِيْنَ مِنْ خَطٰيٰهُمْ مِّنْ شَيْءٍ ؕ اِنَّهُمْ لَكٰذِبُوْنَ ﴿١٢﴾

१४. परन्तु तिनीहरूले अवश्य आफ्नो बोझ भने उठाउने छन्, तथा आफ्नोबाहेक अन्य व्यक्तिहरूको बोझ पनि उठाउने छन् । तथा पुनरुत्थानका दिन तिनीहरूले गढेका कुराहरूबारे तिनीहरूलाई अवश्य सोधिनेछ ।

وَلَيَحْمِلُنَّ اَثْقَالَهُمْ وَاَثْقَالًا مَّعَ اَثْقَالِهِمْ ۫ وَلَيُسْـَٔلُنَّ يَوْمَ الْقِيٰمَةِ عَمَّا كَانُوْا يَفْتَرُوْنَ ﴿١٣﴾

१५. तथा हामीले नूहलाई निस्सन्देह उनका -जातिका) मानिसहरूतर्फ पठाएका थियौं, तथा उनी तिनीहरूसित एक हजारमा पचास साल कम (अर्थात् नौसयपचास साल) रहे । त्यसपछि तिनीहरूलाई जलप्रलयले घेर्‍यो, किनभने तिनीहरू अत्याचारी थिए ।

وَلَقَدْ اَرْسَلْنَا نُوْحًا اِلٰى قَوْمِهٖ فَلَبِثَ فِيْهِمْ اَلْفَ سَنَةٍ اِلَّا خَمْسِيْنَ عَامًا ؕ فَاَخَذَهُمُ الطُّوْفَانُ وَهُمْ ظٰلِمُوْنَ ﴿١٤﴾

१६. परन्तु हामीले उनलाई र (उनीसित) डुंगामा सवार व्यक्तिहरूलाई बचायौं, तथा त्यस (डुंगा)लाई हामीले सम्पूर्ण मानवजातिका निम्ति एउटा चिह्न बनायौं

فَاَنْجَيْنٰهُ وَاَصْحٰبَ السَّفِيْنَةِ وَجَعَلْنٰهَاۤ اٰيَةً لِّلْعٰلَمِيْنَ ﴿١٥﴾

१७. तथा इब्राहिमलाई (स्मरण गर) जब उनले आफ्ना मानिसहरूलाई भने, "अल्लाहको उपासना गर तथा उनीसित डराऊ । यदि तिमीहरू जान्दछौ भने यो (कार्य) तिमीहरूका निम्ति उत्तम रहनेछ ।

وَاِبْرٰهِيْمَ اِذْ قَالَ لِقَوْمِهِ اعْبُدُوا اللّٰهَ وَاتَّقُوْهُ ؕ ذٰلِكُمْ خَيْرٌ لَّكُمْ اِنْ كُنْتُمْ تَعْلَمُوْنَ ﴿١٦﴾

१८. "तिमीहरू अल्लाहलाई छाडी केवल मूर्तिहरूको उपासना गर्छौ, तथा तिमीहरू

اِنَّمَا تَعْبُدُوْنَ مِنْ دُوْنِ اللّٰهِ اَوْثَانًا وَّتَخْلُقُوْنَ اِفْكًا ؕ اِنَّ الَّذِيْنَ

मिथ्या कुरा गढ्छौ । अल्लाहबाहेक जसको तिमीहरू उपासना गर्छौ, तिनीहरूमा तिमीहरूलाई जीविका प्रदान गर्ने क्षमता छैन । अतः अल्लाहसितै जीविका माग्ने गर, तथा उनको उपासना गर, तथा उनकै कृतज्ञ बन । तिमीहरूलाई उनीतर्फै फर्काएर लगिनेछ ।

تَعْبُدُوْنَ مِنْ دُوْنِ اللّٰهِ لَا يَمْلِكُوْنَ لَكُمْ رِزْقًا فَابْتَغُوْا عِنْدَ اللّٰهِ الرِّزْقَ وَاعْبُدُوْهُ وَاشْكُرُوْا لَهٗ ؕ اِلَيْهِ تُرْجَعُوْنَ ﴿١٨﴾

१९. "तथा यदि तिमीहरूले अस्वीकार गरेमा, तिमीहरूभन्दा पहिलाका पुस्ताहरूले -पनि) ता अस्वीकार गरेका थिए । तथा सन्देशवाहकको जिम्मेवारी ता केवल स्पष्ट रूपमा (सन्देश) पुऱ्याउनु रहेको छ ।

وَاِنْ تُكَذِّبُوْا فَقَدْ كَذَّبَ اُمَمٌ مِّنْ قَبْلِكُمْ ؕ وَمَا عَلَى الرَّسُوْلِ اِلَّا الْبَلٰغُ الْمُبِيْنُ ﴿١٩﴾

२०. अल्लाहले कसरी सृष्टि प्रारम्भ गर्छन् र त्यसपछि कसरी त्यसलाई दोहोऱ्याउँछन् भन्ने कुरा तिनीहरूले देखेका छैनन् र ? त्यो (कार्य) अल्लाहका निम्ति निश्चयपूर्वक अति सरल रहेको छ ।

اَوَلَمْ يَرَوْا كَيْفَ يُبْدِئُ اللّٰهُ الْخَلْقَ ثُمَّ يُعِيْدُهٗ ؕ اِنَّ ذٰلِكَ عَلَى اللّٰهِ يَسِيْرٌ ﴿٢٠﴾

२१. तिमी भन, "तिमीहरू जगतमा डुलेर-घुमेर कसरी अल्लाहले सृष्टि प्रारम्भ गरेका थिए भन्ने कुरा हेर । (त्यसपछि) अल्लाहले पुनः (पछि गएर) अर्को सृष्टि खडा गर्नेछन् ।" सम्पूर्ण कुराहरूमाथि अल्लाह निश्चय नै पूर्ण क्षमतावान् छन्* ।

قُلْ سِيْرُوْا فِى الْاَرْضِ فَانْظُرُوْا كَيْفَ بَدَاَ الْخَلْقَ ثُمَّ اللّٰهُ يُنْشِئُ النَّشْاَةَ الْاٰخِرَةَ ؕ اِنَّ اللّٰهَ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ﴿٢١﴾

२२. उनले जसलाई इच्छा गर्छन् त्यसलाई दण्ड दिन्छन्, तथा त्यसमाथि करुणा प्रदर्शन गर्छन् जसलाई उनले चाहन्छन्, तथा उनीतर्फै तिमीहरूलाई

يُعَذِّبُ مَنْ يَّشَآءُ وَيَرْحَمُ مَنْ يَّشَآءُ ۚ وَاِلَيْهِ تُقْلَبُوْنَ ﴿٢٢﴾

---

* टिप्पणी : एउटा शब्द निर्वाचनको नगण्य परिवर्तनका साथ यही दृश्य एउटा अर्को यस्तै आयत ५३:४८ (अल्-(नजम)मा पनि प्रस्तुत गरिएको छ । आखिरः ( )को सट्टा त्यहाँ उख्रा ( ) शब्द प्रयोग भएको छ । आखिरः ( )लाई 'पछि' को अर्थमा अनुवाद गर्न सकिन्छ भने उख्रा ( )को अर्थ 'अर्को' हुनेछ । अतः उख्रा ( ) र आखिरः ( ) दुबै शब्दहरू जब एकसाथ मिलाइन्छ तब निश्चितरूपमा के अर्थ बन्छ भने : पछिका दिनहरूमा अर्को प्रकारका सृष्टि खडा गर्नेछन् ।

फर्काएर लगिनेछ ।

وَمَآ اَنۡـتُمۡ بِمُعۡجِزِيۡنَ فِى الۡاَرۡضِ وَلَا فِى السَّمَآءِ‌ ۚ وَمَا لَكُمۡ مِّنۡ دُوۡنِ اللّٰهِ مِنۡ وَّلِىٍّ وَّلَا نَصِيۡرٍ ﴿۲۲﴾

२३. तथा (अल्लाहको योजनालाई) तिमीहरूले न पृथ्वीमा असफल गर्न सक्छौ न त आकाशमा नै; तथा अल्लाहबाहेक तिमीहरूको कुनै मित्र अथवा सहयोगी छैन

وَالَّذِيۡنَ كَفَرُوۡا بِاٰيٰتِ اللّٰهِ وَلِقَآئِهٖۤ اُولٰٓـئِكَ يَئِسُوۡا مِنۡ رَّحۡمَتِىۡ وَاُولٰٓـئِكَ لَهُمۡ عَذَابٌ اَلِيۡمٌ ﴿۲۳﴾

२४. जुन व्यक्तिहरू अल्लाहका चिह्नहरूप्रति तथा उनीसित हुने भेटप्रति अविश्वास गर्छन् – ती तिनै व्यक्तिहरू हुन्, जो मेरो करुणाबाट निराश भएका छन् । तथा तिनीहरूलाई यातनादायक दण्ड मिल्नेछ ।

فَمَا كَانَ جَوَابَ قَوۡمِهٖۤ اِلَّاۤ اَنۡ قَالُوا اقۡتُلُوۡهُ اَوۡ حَرِّقُوۡهُ فَاَنۡجٰٮهُ اللّٰهُ مِنَ النَّارِ‌ ؕ اِنَّ فِىۡ ذٰلِكَ لَاٰيٰتٍ لِّقَوۡمٍ يُّؤۡمِنُوۡنَ ﴿۲۴﴾

२५. तथा उनका जाति(का मानिसहरू) को एकमात्र उत्तर के थियो भने, "त्यसलाई मार अथवा त्यसलाई जलाऊ ।" परन्तु अल्लाहले उनलाई अग्निबाट बचाए । त्यस घटनामा विश्वास गर्ने मानिसहरूका निम्ति निश्चयपूर्वक एउटा चिह्नहरू रहेका छन् ।

وَقَالَ اِنَّمَا اتَّخَذۡتُمۡ مِّنۡ دُوۡنِ اللّٰهِ اَوۡثَانًا ۙ مَّوَدَّةَ بَيۡنِكُمۡ فِى الۡحَيٰوةِ الدُّنۡيَا‌ ۚ ثُمَّ يَوۡمَ الۡقِيٰمَةِ يَكۡفُرُ بَعۡضُكُمۡ بِبَعۡضٍ وَّيَلۡعَنُ بَعۡضُكُمۡ بَعۡضًا وَّمَاۡوٰٮكُمُ النَّارُ وَمَا لَكُمۡ مِّنۡ نّٰصِرِيۡنَ ﴿۲۵﴾ۙ

२६. तथा उनले भने, "वस्तुतः यस संसारमा परस्पर एकअर्काको मायामोहका कारण तिमीहरूले अल्लाहलाई छाडी आफ्ना निम्ति (उपास्यस्वरूप) मूर्तिहरूलाई चुनेका छौ । त्यसपछि कयामत (पुनरुत्थान)का दिन तिमीहरूले परस्पर एकअर्कालाई अस्वीकार गर्नेछौ र एकअर्कालाई श्राप दिनेछौ । तथा अग्नि नै तिमीहरूको ठेगाना हुनेछ, तथा तिमीहरूको कोही सहयोगी हुनेछैन ।

فَاٰمَنَ لَهٗ لُوۡطٌ‌ ۘ وَقَالَ اِنِّىۡ مُهَاجِرٌ اِلٰى رَبِّىۡ‌ ؕ اِنَّهٗ هُوَ الۡعَزِيۡزُ الۡحَكِيۡمُ ﴿۲۶﴾

२७. तथा लूतले उनीप्रति विश्वास गरे, तथा (इब्राहिमले) भने, म आफ्ना प्रतिपालकको शरण याचना गर्छु, निश्चय नै उनी परम पराक्रमी, तत्त्वज्ञ

छन् ।"

वَوَهَبْنَا لَهُ إِسْحٰقَ وَيَعْقُوبَ وَجَعَلْنَا فِي ذُرِّيَّتِهِ النُّبُوَّةَ وَالْكِتٰبَ وَآتَيْنٰهُ أَجْرَهُ فِي الدُّنْيَا وَإِنَّهُ فِي الْآخِرَةِ لَمِنَ الصّٰلِحِينَ ﴿٢٨﴾

२८. तथा उनलाई हामीले इस्हाक र याकूब प्रदान गर्‍यौं, तथा उनका सन्तानलाई हामीले नबुव्वत् (अवतारवाद) र पुस्तक (उपहारस्वरूप) प्रदान गर्न निर्वाचित गर्‍यौं, तथा उनलाई हामीले यस संसारमा उनको प्रतिदान प्रदान गर्‍यौं तथा परलोकमा उनी निश्चयपूर्वक सत्यपरायण व्यक्तिहरूमध्ये हुनेछन् ।

وَلُوطًا إِذْ قَالَ لِقَوْمِهِ إِنَّكُمْ لَتَأْتُونَ الْفَاحِشَةَ مَا سَبَقَكُمْ بِهَا مِنْ أَحَدٍ مِنَ الْعٰلَمِينَ ﴿٢٩﴾

२९. तथा (हामीले) लूतलाई (पठायौं), उनले आफ्ना मानिसहरूलाई भने, "तिमीहरू एउटा यस्तो घृणित कार्य लिप्त छौ जुन कार्य तिमीहरूभन्दा पहिला कुनै जातिका मानिसहरूले कदापि गरेका थिएनन् ।

أَئِنَّكُمْ لَتَأْتُونَ الرِّجَالَ وَتَقْطَعُونَ السَّبِيلَ وَتَأْتُونَ فِي نَادِيكُمُ الْمُنْكَرَ فَمَا كَانَ جَوَابَ قَوْمِهِ إِلَّا أَنْ قَالُوا ائْتِنَا بِعَذَابِ اللّٰهِ إِنْ كُنْتَ مِنَ الصّٰدِقِينَ ﴿٣٠﴾

३०. "के तिमीहरू (कामवासनाका साथ) पुरुषहरूसमक्ष आउँछौ तथा (यात्रीहरूलाई) राजमार्गमा बसेर लुट्छौ? तथा आफ्ना सभाहरूमा तिमीहरू घृणित कुरा गर्नमा व्यस्त रहन्छौं । परन्तु उनका मानिसहरूको उत्तर केवल के थियो भने, "यदि तिमी सत्य बोलिरहेछौ भने हामीसमक्ष अल्लाहको दण्ड प्रस्तुत गर ।"

قَالَ رَبِّ انْصُرْنِي عَلَى الْقَوْمِ الْمُفْسِدِينَ ﴿٣١﴾

३१. उनले भने, "हे मेरा प्रतिपालक, अनिष्टकारी मानिसहरूविरुद्ध मलाई मद्दत गर ।"

وَلَمَّا جَاءَتْ رُسُلُنَا إِبْرٰهِيمَ بِالْبُشْرٰى قَالُوا إِنَّا مُهْلِكُوا أَهْلِ هٰذِهِ الْقَرْيَةِ إِنَّ أَهْلَهَا كَانُوا ظٰلِمِينَ ﴿٣٢﴾

३२. तथा जब हाम्रा सन्देशवाहकहरू शुभसन्देशका साथ इब्राहिमसमक्ष आए, तब तिनीहरूले भने, "हामी यस नगरका मानिसहरूलाई ध्वस्त पार्न

लागिरहेछौं, निश्चय नै यहाँका मानिसहरू अत्याचारी छन् ।

قَالَ إِنَّ فِيهَا لُوطًا ۚ قَالُوا نَحْنُ أَعْلَمُ بِمَن فِيهَا ۖ لَنُنَجِّيَنَّهُ وَأَهْلَهُ إِلَّا امْرَأَتَهُ كَانَتْ مِنَ الْغَابِرِينَ ﴿٣٢﴾

३३. उनले भने, "परन्तु त्यहाँ लूत पनि छन् ।" तिनीहरूले भने, "त्यहाँ को को छन् (भन्ने कुरा) हामी राम्ररी जान्दछौं । हामी उनकी पत्नीबाहेक उनलाई र उनका परिवारलाई अवश्य बचाउनेछौं, ती (उनकी पत्नी) भने पछिबस्ने व्यक्तिहरूमा सामेल छिन् ।"

وَلَمَّا أَن جَاءَتْ رُسُلُنَا لُوطًا سِيءَ بِهِمْ وَضَاقَ بِهِمْ ذَرْعًا وَقَالُوا لَا تَخَفْ وَلَا تَحْزَنْ ۖ إِنَّا مُنَجُّوكَ وَأَهْلَكَ إِلَّا امْرَأَتَكَ كَانَتْ مِنَ الْغَابِرِينَ ﴿٣٣﴾

३४. तथा जब हाम्रा सन्देशवाहक लूतसमक्ष आए, तिनीहरूका कारण उनी दुःखी भए र तिनीहरूको (सुरक्षाको) सम्बन्धमा आफूलाई असमर्थ ठाने । तथा तिनीहरूले भने, "तिमी नडराऊ, न त तिमी दुःखी होऊ, पछि रहने मानिसहरूमा सामेल हुने तिम्रो पत्नीबाहेक हामी निश्चयपूर्वक तिम्रो र तिम्रा परिवारको सुरक्षा गर्नेछौं ।

إِنَّا مُنزِلُونَ عَلَىٰ أَهْلِ هَٰذِهِ الْقَرْيَةِ رِجْزًا مِّنَ السَّمَاءِ بِمَا كَانُوا يَفْسُقُونَ ﴿٣٤﴾

३५. हामी यसन गरका मानिसहरू माथि तिनीहरूको आज्ञोल्लङ्घनका कारण निश्चयपूर्वक आकाशबाट एउटा दण्ड अवतीर्ण गर्न लागिरहेछौं ।"

وَلَقَد تَّرَكْنَا مِنْهَا آيَةً بَيِّنَةً لِّقَوْمٍ يَعْقِلُونَ ﴿٣٥﴾

३६. तथा हामीले त्यस घटनामा बुद्धिमान व्यक्तिहरूका निम्ति एउटा स्पष्ट चिह्न छाडेका छौं ।

وَإِلَىٰ مَدْيَنَ أَخَاهُمْ شُعَيْبًا فَقَالَ يَا قَوْمِ اعْبُدُوا اللَّهَ وَارْجُوا الْيَوْمَ الْآخِرَ وَلَا تَعْثَوْا فِي الْأَرْضِ مُفْسِدِينَ ﴿٣٦﴾

३७. तथा मिद्यानतर्फ तिनीहरूका भाइ शूऐबलाई (हामीले पठायौं), उनले भने, "हे मेरा मानिसहरू हो, अल्लाहको उपासना गर, तथा अन्तिमदिनप्रति डराऊ तथा देशमा अशान्ति फैलाउन अन्यायपूर्ण कार्यहरू नगर ।"

فَكَذَّبُوهُ فَأَخَذَتْهُمُ الرَّجْفَةُ فَأَصْبَحُوا فِي دَارِهِمْ جَاثِمِينَ ﴿٣٧﴾

३८. परन्तु तिनीहरूले उनलाई मिथ्यावादी घोषित गरे । त्यसकारण एउटा भयानक भूकम्पले तिनीहरूलाई ध्वस्त पाऱ्यो, फलस्वरूप तिनीहरू आफ्नै घरमा घोप्टिन पुगे ।

وَعَادًا وَثَمُودَا۟ وَقَد تَّبَيَّنَ لَكُم مِّن مَّسَٰكِنِهِمْ ۖ وَزَيَّنَ لَهُمُ الشَّيْطَٰنُ أَعْمَٰلَهُمْ فَصَدَّهُمْ عَنِ السَّبِيلِ وَكَانُوا مُسْتَبْصِرِينَ ﴿٣٨﴾

३९. तथा (हामीले) आद् र समूद जातिलाई पनि (ध्वस्त पाऱ्यौं), तथा तिनीहरूका निवासस्थानहरू तिमीहरूका निम्ति प्रमाणस्वरूप रहेका छन् । तथा सैतानले तिनीहरूका कार्यहरू तिनीहरूका दृष्टिमा उत्तम (तुल्याएर) देखायो । यसै प्रकार उसले तिनीहरूलाई तिनीहरूमा (सत्यलाई) बुझ्ने योग्यता हुँदाहुँदै पनि सन्मार्गबाट विमुख तुल्यायो

وَقَٰرُونَ وَفِرْعَوْنَ وَهَٰمَٰنَ ۖ وَلَقَدْ جَآءَهُم مُّوسَىٰ بِالْبَيِّنَٰتِ فَاسْتَكْبَرُوا فِي الْأَرْضِ وَمَا كَانُوا سَٰبِقِينَ ﴿٣٩﴾

४०. तथा (हामीले) कारुन (कौरा) र फिरौन तथा हामानलाई (विनाश गऱ्यौं) । तथा तिनीहरूसमक्ष स्पष्ट चिह्नका साथ मूसा आएका थिए, परन्तु देशमा तिनीहरूले अहङ्कारपूर्ण व्यवहार गरे, तथापि तिनीहरू (हामीबाट) उम्कन सकेनन् ।

فَكُلًّا أَخَذْنَا بِذَنۢبِهِۦ ۖ فَمِنْهُم مَّنْ أَرْسَلْنَا عَلَيْهِ حَاصِبًا ۖ وَمِنْهُم مَّنْ أَخَذَتْهُ الصَّيْحَةُ ۖ وَمِنْهُم مَّنْ خَسَفْنَا بِهِ الْأَرْضَ ۖ وَمِنْهُم مَّنْ أَغْرَقْنَا ۚ وَمَا كَانَ اللَّهُ لِيَظْلِمَهُمْ وَلَٰكِن كَانُوٓا أَنفُسَهُمْ يَظْلِمُونَ ﴿٤٠﴾

४१. अतः (तिनीहरूमध्ये) हरेकलाई हामीले त्यसको पापका कारण समात्यौं, तिनीहरूमध्ये केही यस्ता थिए जसका विरुद्ध हामीले धूलोयुक्त आँधीबेहरी पठायौं, तथा तिनीहरूमध्ये केही यस्ता थिए जसमाथि बज्र पऱ्यो । तथा तिनीहरूमध्ये केहीलाई भने हामीले पृथ्वीमा धसायौं, केहीलाई चाहिँ (पानीमा) डुबायौं । तथा अल्लाहले तिनीहरूमाथि अत्याचार गरेनन्, अपितु तिनीहरू आफ्नो ज्यानमाथि स्वयम्

अत्याचार गर्ने गर्थे ।

مَثَلُ الَّذِيْنَ اتَّخَذُوْا مِنْ دُوْنِ اللّٰهِ
اَوْلِيَآءَ كَمَثَلِ الْعَنْكَبُوْتِ ۚ
اِتَّخَذَتْ بَيْتًا ۗ وَ اِنَّ اَوْهَنَ
الْبُيُوْتِ لَبَيْتُ الْعَنْكَبُوْتِ ۘ
لَوْ كَانُوْا يَعْلَمُوْنَ ﴿٤١﴾

४२. जसले अल्लाहलाई छाडी (अन्य वस्तुहरूलाई) सहयोगी बनाउँछन् । तिनीहरूको अवस्था त्यस माकुराको अवस्थासदृश रहेको छ जसले स्वयम्का निम्ति एउटा घर (जालो) बनाउँछ, तथा माकुराको घर निश्चयपूर्वक (सबै) घरहरूभन्दा दुर्बलतम हुन्छ, परन्तु यदि तिनीहरूले बुझेका भए !

اِنَّ اللّٰهَ يَعْلَمُ مَا يَدْعُوْنَ مِنْ
دُوْنِهٖ مِنْ شَيْءٍ ۗ وَ هُوَ الْعَزِيْزُ
الْحَكِيْمُ ﴿٤٢﴾

४३. वस्तुतः तिनीहरूले अल्लाहलाई छाडी जसलाई पुकार्छन्, उनले त्यसलाई जान्दछन्, तथा उनी परम पराक्रमी, परम तत्त्वज्ञ छन् ।

وَتِلْكَ الْاَمْثَالُ نَضْرِبُهَا لِلنَّاسِ ۚ
وَمَا يَعْقِلُهَآ اِلَّا الْعٰلِمُوْنَ ﴿٤٣﴾

४४. तथा यी उदाहरणहरू हामी मानवजातिका निम्ति वर्णन गर्छौं । परन्तु तिनीहरूलाई केवल ज्ञानवान् व्यक्तिहरूले (मात्र) बुझ्न सक्छन् ।

خَلَقَ اللّٰهُ السَّمٰوٰتِ وَ الْاَرْضَ
بِالْحَقِّ ۗ اِنَّ فِيْ ذٰلِكَ لَاٰيَةً
لِّلْمُؤْمِنِيْنَ ﴿٤٤﴾

४५. अल्लाहले आकाशमण्डल र पृथ्वीलाई सत्यमा आधारित गरी सिर्जना गरेका छन्। यस कुरामा विश्वासीजनका निम्ति अवश्य एउटा चिह्न रहेको छ ।

اُتْلُ مَآ اُوْحِيَ اِلَيْكَ مِنَ الْكِتٰبِ
وَاَقِمِ الصَّلٰوةَ ۗ اِنَّ الصَّلٰوةَ تَنْهٰى عَنِ
الْفَحْشَآءِ وَالْمُنْكَرِ ۗ وَلَذِكْرُ اللّٰهِ اَكْبَرُ ۗ
وَاللّٰهُ يَعْلَمُ مَا تَصْنَعُوْنَ ﴿٤٥﴾

४६. यस पुस्तकबाट तिमीमाथि आकाशवाणी गरिएको (शिक्षाको) पाठ गर, तथा नमाज अनुष्ठान गर । नमाजले निश्चयपूर्वक (मानिसलाई) अशिष्ट र अपवित्र कुराहरूबाट रोक्छ, तथा अल्लाहको स्मरण गर्ने कार्य वस्तुतः एउटा महान (सदाचार) हो । तथा तिमीहरू जुनकार्य गर्छौ अल्लाहले त्यसलाई जान्दछन् ।

وَلَا تُجَادِلُوٓا أَهْلَ الْكِتٰبِ إِلَّا بِالَّتِيْ هِيَ أَحْسَنُ ۖ إِلَّا الَّذِيْنَ ظَلَمُوْا مِنْهُمْ وَقُوْلُوٓا اٰمَنَّا بِالَّذِيٓ أُنْزِلَ إِلَيْنَا وَأُنْزِلَ إِلَيْكُمْ وَإِلٰهُنَا وَإِلٰهُكُمْ وَاحِدٌ وَّنَحْنُ لَهٗ مُسْلِمُوْنَ ﴿٤٦﴾

४७. तथा पुस्तकप्राप्त व्यक्तिहरूसित उत्तम प्रामाणिक कुराहरूबाहेक तर्क नगर, परन्तु तिनीहरूमध्ये अत्याचारी व्यक्तिहरूसित (भने पटक्कै तर्क नगर) । तथा भन, "हामी त्यसप्रति विश्वास गर्छौं जुन हामीमाथि अवतीर्ण गरिएको छ, तथा त्यसप्रति (पनि); र जुन तिमीहरूमाथि अवतीर्ण गरिएको छ । तथा हाम्रा प्रतिपालकर तिमीहरूका उपास्य एउटै हुन्, तथा हामी उनकै आज्ञाकारी रहेका छौं ।"

وَكَذٰلِكَ أَنْزَلْنَآ إِلَيْكَ الْكِتٰبَ ۚ فَالَّذِيْنَ اٰتَيْنٰهُمُ الْكِتٰبَ يُؤْمِنُوْنَ بِهٖ ۚ وَمِنْ هٰٓؤُلَآءِ مَنْ يُّؤْمِنُ بِهٖ ۚ وَمَا يَجْحَدُ بِاٰيٰتِنَآ إِلَّا الْكٰفِرُوْنَ ﴿٤٧﴾

४८. तथा यसै प्रकार हामीले तिमीमाथि यो पुस्तक अवतीर्ण गरेकाछौं, अतः जुन व्यक्तिहरूलाई हामीले यस पुस्तक (को वास्तविक ज्ञान) प्रदान गरेकाछौं, तिनीहरूले यसप्रति (कुरानप्रति) विश्वास गर्छन् । तथा ती (मक्कावासीहरू)मध्ये (पनि) केही व्यक्तिहरू यस्ता छन् जसले यसप्रति विश्वास गर्छन् । तथा अकृतज्ञ व्यक्तिहरूले मात्र हाम्रा निर्देशनहरूलाई अस्वीकार गर्छन् ।

وَمَا كُنْتَ تَتْلُوْا مِنْ قَبْلِهٖ مِنْ كِتٰبٍ وَّلَا تَخُطُّهٗ بِيَمِيْنِكَ إِذًا لَّارْتَابَ الْمُبْطِلُوْنَ ﴿٤٨﴾

४९. तथा यसभन्दा पहिला न तिमीले कुनै पुस्तक पढेका थियौ न त तिमीले आफ्नो दाहिने हातले त्यसलाई लेखेका थियौ, यदि त्यसो भएको भएता मिथ्यावादीहरूले सन्देह गर्ने थिए ।

بَلْ هُوَ اٰيٰتٌۢ بَيِّنٰتٌ فِيْ صُدُوْرِ الَّذِيْنَ أُوْتُوا الْعِلْمَ ۚ وَمَا يَجْحَدُ بِاٰيٰتِنَآ إِلَّا الظّٰلِمُوْنَ ﴿٤٩﴾

५०. होइन, (अपितु) यो ता जुन व्यक्तिहरूलाई ज्ञान प्रदान गरिएको छ तिनीहरूका हृदयमा विराजमान स्पष्ट चिह्नहरू(को सङ्ग्रह) हो । तथा अत्याचारी व्यक्तिहरूबाहेक अरू कसैले

हाम्रा चिह्नहरूलाई अस्वीकार गर्दैनन् ।

५१. तथा तिनीहरू भन्छन्, "उसप्रति उसका प्रतिपालकका तर्फबाट किन चिह्नहरू अवतीर्ण भएनन्?" तिमी भन, "चिह्नहरू ता अल्लाहका जुनाफमा रहेका छन्, तथा म ता स्पष्टरूपमा सतर्क गर्ने व्यक्ति हुँ ।"

وَقَالُوا لَوْلَآ أُنْزِلَ عَلَيْهِ اٰيٰتٌ مِّنْ رَّبِّهٖ ؕ قُلْ اِنَّمَا الْاٰيٰتُ عِنْدَ اللّٰهِ ؕ وَاِنَّمَآ اَنَا نَذِيْرٌ مُّبِيْنٌ ﴿٥١﴾

५२. हामीले तिमीप्रति त्यो पुस्तक (कुरान) अवतीर्ण गरेकाछौं जुन तिनीहरूलाई पढेर सुनाइन्छ, के तिनीहरूकानिम्तित्यो (चिह्न) पर्याप्त रहेको छैन र? वस्तुतः यसमा विश्वासीजनका निम्ति करुणा र स्मरण (को साधन) रहेको छ ।

اَوَلَمْ يَكْفِهِمْ اَنَّآ اَنْزَلْنَا عَلَيْكَ الْكِتٰبَ يُتْلٰى عَلَيْهِمْ ؕ اِنَّ فِيْ ذٰلِكَ لَرَحْمَةً وَّ ذِكْرٰى لِقَوْمٍ يُّؤْمِنُوْنَ ﴿٥٢﴾

५३. तिमी भन, " म र तिमीहरूका बीचमा साक्षीस्वरूप अल्लाह नै पर्याप्त रहेका छन् । आकाशमण्डल र पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरूलाई उनी जान्दछन् । जुन व्यक्तिहरू मिथ्या कुराहरूमा विश्वास गर्छन् र अल्लाहप्रति अविश्वास गर्छन्, तिनीहरू नै (वास्तवमा) घाटाग्रस्त व्यक्तिहरू हुन् ।"

قُلْ كَفٰى بِاللّٰهِ بَيْنِيْ وَبَيْنَكُمْ شَهِيْدًا ۚ يَعْلَمُ مَا فِي السَّمٰوٰتِ وَالْاَرْضِ ؕ وَالَّذِيْنَ اٰمَنُوْا بِالْبَاطِلِ وَكَفَرُوْا بِاللّٰهِ ۙ اُولٰٓئِكَ هُمُ الْخٰسِرُوْنَ ﴿٥٣﴾

५४. तिनीहरू तिमीसित शीघ्र दण्ड प्रस्तुत गर्ने आग्रह गर्छन्, तथा यदि एउटा समय निर्धारित नरहेको भए तिनीहरूमाथि अवश्य दण्ड बर्सने थियो । तथा तिनीहरूले थाहा नपाइकन त्यसले (दण्डले) अकस्मात् तिनीहरूलाई समात्नेछ ।

وَيَسْتَعْجِلُوْنَكَ بِالْعَذَابِ ؕ وَلَوْلَآ اَجَلٌ مُّسَمًّى لَّجَآءَهُمُ الْعَذَابُ ؕ وَلَيَاْتِيَنَّهُمْ بَغْتَةً وَّهُمْ لَا يَشْعُرُوْنَ ﴿٥٤﴾

५५. तिनीहरू तिमीसित शीघ्र दण्ड प्रस्तुत गर्न आग्रह गर्छन्, परन्तु

يَسْتَعْجِلُوْنَكَ بِالْعَذَابِ ؕ وَاِنَّ جَهَنَّمَ لَمُحِيْطَةٌ بِالْكٰفِرِيْنَ ﴿٥٥﴾

वास्तवमा नर्कले अविश्वासी व्यक्तिहरूलाई (पहिल्यै) घेरिसकेको छ ।

يَوْمَ يَغْشٰىهُمُ الْعَذَابُ مِنْ فَوْقِهِمْ وَمِنْ تَحْتِ اَرْجُلِهِمْ وَيَقُوْلُ ذُوْقُوْا مَا كُنْتُمْ تَعْمَلُوْنَ ﴿٥٥﴾

५६. त्यसदिनको (स्मरण गर) जब दण्डले तिनीहरूलाई तिनीहरूका माथिबाट र तिनीहरूका पाउमनिबाट ढाक्नेछ, तथा उनले भन्नेछन्, "तिमीहरू आफ्ना कार्यहरूको (फल) चाख ।"

يٰعِبَادِيَ الَّذِيْنَ اٰمَنُوْٓا اِنَّ اَرْضِيْ وَاسِعَةٌ فَاِيَّايَ فَاعْبُدُوْنِ ﴿٥٦﴾

५७. हे मेरा विश्वासी भृत्यहरू हो ! वस्तुतः मेरो जगत अति विस्तृत छ, त्यसकारण केवल मेरो उपासना गर ।

كُلُّ نَفْسٍ ذَآئِقَةُ الْمَوْتِ ۗ ثُمَّ اِلَيْنَا تُرْجَعُوْنَ ﴿٥٧﴾

५८. हरेक आत्माले मृत्युको स्वाद चाख्नेछ, त्यसपछि तिमीहरूलाई हामीतर्फै फर्काएर ल्याइनेछ ।

وَالَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ لَنُبَوِّئَنَّهُمْ مِّنَ الْجَنَّةِ غُرَفًا تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ خٰلِدِيْنَ فِيْهَا ۗ نِعْمَ اَجْرُ الْعٰمِلِيْنَ ﴿٥٨﴾

५९. तथा जुन व्यक्तिहरू विश्वास गर्छन् र पुण्य कार्य गर्छन्– तिनीहरूलाई हामी स्वर्गको यस्तो भव्य भवनमा बसाउँनेछौं, जसमनि नहरहरू बग्ने गर्छन् । तिनीहरू त्यहाँ सदा रहनेछन् । (पुण्य) कार्य गर्ने व्यक्तिहरूको प्रतिदान अति नै उत्तम रहेको छ,

الَّذِيْنَ صَبَرُوْا وَعَلٰى رَبِّهِمْ يَتَوَكَّلُوْنَ ﴿٥٩﴾

६०. ती व्यक्तिहरूको, जसले धैर्यधारण गर्छन् तथा आफ्ना प्रतिपालकमाथि पूर्ण भरोसा राख्छन् ।

وَكَاَيِّنْ مِّنْ دَآبَّةٍ لَّا تَحْمِلُ رِزْقَهَا ۖ اَللّٰهُ يَرْزُقُهَا وَاِيَّاكُمْ ۖ وَهُوَ السَّمِيْعُ الْعَلِيْمُ ﴿٦٠﴾

६१. तथा धेरै यस्ता प्राणीहरू छन्, जसले आफ्नो खाद्यान्न लिएर हिँड्ने गर्दैनन् । अल्लाहले नै तिनीहरूलाई र तिमीहरूलाई (समेत) खाद्यान्न प्रदान गर्छन् । तथा उनी सर्वस्रोता, सर्वज्ञ छन्

وَلَئِنْ سَاَلْتَهُمْ مَّنْ خَلَقَ السَّمٰوٰتِ وَ

६२. तथा यदि तिमीले तिनीहरूलाई

الْأَرْضَ وَسَخَّرَ الشَّمْسَ وَالْقَمَرَ لَيَقُولُنَّ اللَّهُ ۖ فَأَنَّىٰ يُؤْفَكُونَ ﴿٦٢﴾

"आकाशमण्डल र पृथ्वी कसले सृष्टि गरेका हुन् तथा सूर्यलाई र चन्द्रमालाई कसले सेवामा लगाएका हुन् ।" भनी प्रश्न गरेमा, तिनीहरूले अवश्य के भन्नेछन् भने, "अल्लाहले ।" त्यसोभए तिनीहरूलाई कसरी पथभ्रष्ट गरिँदैछ त?

اللَّهُ يَبْسُطُ الرِّزْقَ لِمَنْ يَشَاءُ مِنْ عِبَادِهِ وَيَقْدِرُ لَهُ ۚ إِنَّ اللَّهَ بِكُلِّ شَيْءٍ عَلِيمٌ ﴿٦٣﴾

६३. अल्लाहले जसका निम्ति चाहन्छन् उसका निम्ति (जीविकाका साधनहरू) विस्तृत तुल्याउँछन्, तथा जसका निम्ति उनले चाहन्छन् (तिनीहरूलाई) सङ्कीर्ण तुल्याउँछन् । निश्चय नै अल्लाहलाई सम्पूर्ण वस्तुहरूबारे पूर्ण ज्ञान प्राप्त छ ।

وَلَئِنْ سَأَلْتَهُمْ مَنْ نَزَّلَ مِنَ السَّمَاءِ مَاءً فَأَحْيَا بِهِ الْأَرْضَ مِنْ بَعْدِ مَوْتِهَا لَيَقُولُنَّ اللَّهُ ۚ قُلِ الْحَمْدُ لِلَّهِ ۚ بَلْ أَكْثَرُهُمْ لَا يَعْقِلُونَ ﴿٦٤﴾

६४. "कसले आकाशबाट पानी बर्साउँछ तथा त्यसबाट मृत पृथ्वीलाई जीवनदान दिन्छ ?" भनी यदि तिमीले तिनीहरूलाई प्रश्न गरेमा, तिनीहरूले अवश्य भन्नेछन्, "अल्लाहले ।" तिमी भन, "सम्पूर्ण प्रशंसा अल्लाहकै निम्ति रहेको छ ।" परन्तु तिनीहरूमध्ये अधिकतर व्यक्तिहरूले बुझ्दैनन् ।

وَمَا هَٰذِهِ الْحَيَاةُ الدُّنْيَا إِلَّا لَهْوٌ وَلَعِبٌ ۚ وَإِنَّ الدَّارَ الْآخِرَةَ لَهِيَ الْحَيَوَانُ ۚ لَوْ كَانُوا يَعْلَمُونَ ﴿٦٥﴾

६५. तथा यो सांसारिक जीवन केवल आमोद-प्रमोद र खेलबाडबाहेक केही होइन, तथा परलोकको घर भने – त्यो नै वास्तविक जीवन हो, परन्तु यदि तिनीहरूले जानेका भए !

فَإِذَا رَكِبُوا فِي الْفُلْكِ دَعَوُا اللَّهَ مُخْلِصِينَ لَهُ الدِّينَ فَلَمَّا نَجَّاهُمْ إِلَى الْبَرِّ إِذَا هُمْ يُشْرِكُونَ ﴿٦٦﴾

६६. तथा जब तिनीहरू (समुद्री) जहाजमा सवार हुन्छन्, तिनीहरू अल्लाहलाई उनका एकनिष्ठ (भक्त) बनी एकाग्रताका साथ पुकार्छन् । परन्तु जब उनले तिनीहरूलाई सुरक्षित धर्तीमा उतार्छन्, सुन, तिनीहरू (उनका)

भागीदार तुल्याउन लाग्छन् ,

لِيَكْفُرُوْا بِمَآ اٰتَيْنٰهُمْ ۚ وَلِيَتَمَتَّعُوْا ۗ فَسَوْفَ يَعْلَمُوْنَ ﴿٦٦﴾

६७. ताकि हामीले तिनीहरूलाई प्रदान गरेका वस्तुहरूलाई तिनीहरूले अस्वीकार गरून्, तथा -केही समयसम्म) तिनीहरूले आफूखसी मनोरन्जन गरून् । परन्तु अति शीघ्र नै तिनीहरूले (वास्तविक कुरो) जान्नेछन् ।

اَوَلَمْ يَرَوْا اَنَّا جَعَلْنَا حَرَمًا اٰمِنًا وَّيُتَخَطَّفُ النَّاسُ مِنْ حَوْلِهِمْ ۗ اَفَبِالْبَاطِلِ يُؤْمِنُوْنَ وَبِنِعْمَةِ اللّٰهِ يَكْفُرُوْنَ ﴿٦٧﴾

६८. के जब तिनीहरूका छेउछाउबाट मानिसहरूलाई बलपूर्वक निष्कासित गरिन्छ, त्यस अवस्थामा त्यस पवित्रस्थान (मक्का) लाई हामीले (तिनीहरूका निम्ति) सुरक्षित स्थान बनाएका छौं भन्ने कुरा तिनीहरूलाई थाहा छैन र ? त्यसोभए के तिनीहरू मिथ्या कुराहरूप्रति भने विश्वास गर्छन् र अल्लाहको अनुग्रहलाई भने अस्वीकार गर्छन् ?

وَمَنْ اَظْلَمُ مِمَّنِ افْتَرٰى عَلَى اللّٰهِ كَذِبًا اَوْ كَذَّبَ بِالْحَقِّ لَمَّا جَآءَهٗ ۗ اَلَيْسَ فِيْ جَهَنَّمَ مَثْوًى لِّلْكٰفِرِيْنَ ﴿٦٨﴾

६९. जसले अल्लाहका सम्बन्धमा मिथ्या कुरा गर्दछ अथवा त्यससमक्ष सत्यको आगमन् भएपश्चात् त्यसलाई अस्वीकार गर्छ, त्यो व्यक्तिभन्दा ठूलो अत्याचारी अर्को को हुन सक्छ र ? के अविश्वासी व्यक्तिहरूका निम्ति नर्कमा कुनै स्थान (ठेगाना) छैन र?

وَالَّذِيْنَ جَاهَدُوْا فِيْنَا لَنَهْدِيَنَّهُمْ سُبُلَنَا ۗ وَاِنَّ اللّٰهَ لَمَعَ الْمُحْسِنِيْنَ ﴿٦٩﴾

७०. जुन व्यक्तिहरूले हाम्रो मार्गमा प्रयत्न गर्छन्– हामी अवश्य आफ्नो मार्गमा तिनीहरूको मार्गदर्शन गर्नेछौं । तथा जसले पुण्यकर्म गर्छन्, वस्तुतः अल्लाह तिनीहरूसितै रहेका छन् ।

سُوْرَةُ الرُّوْمِ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ اِحْدٰى وَّسِتُّوْنَ اٰيَةً وَّسِتَّةُ رُكُوْعَاتٍ

## अल्–रोम
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

الٓمّٓ ②

२. अलिफ लाम मिम्*

غُلِبَتِ الرُّوْمُ ③

३. रोमनहरूलाई पराजित गरिएको छ,

فِيْٓ اَدْنَى الْاَرْضِ وَهُمْ مِّنْۢ بَعْدِ غَلَبِهِمْ سَيَغْلِبُوْنَ ④

४. निकटको देशमा, तथा तिनीहरू अवश्य आफ्नो पराजयपश्चात् पुनः विजयी हुनेछन् ।

فِيْ بِضْعِ سِنِيْنَ ۥ لِلّٰهِ الْاَمْرُ مِنْ قَبْلُ وَمِنْۢ بَعْدُ ۭ وَيَوْمَىِٕذٍ يَّفْرَحُ الْمُؤْمِنُوْنَ ⑤

५. तीन देखि लिएर नौ साल भित्रैमा–(त्यसो हुनेछ), किनभने (त्यस) अघि पनि अल्लाहकै निर्णय रहेको थियो तथा त्यसपछि पनि (अल्लाहकै निर्णय हुनेछ)– तथा त्यसदिन विश्वासीजन आनन्दित हुनेछन्,

بِنَصْرِ اللّٰهِ ۭ يَنْصُرُ مَنْ يَّشَاۗءُ ۭ وَهُوَ الْعَزِيْزُ الرَّحِيْمُ ⑥

६. अल्लाहको सहयोग प्राप्त गरी । उनले जसलाई इच्छा गर्छन् सहयोग गर्छन्, तथा उनी परम पराक्रमी, परम दानशील छन् ।

وَعْدَ اللّٰهِ ۭ لَا يُخْلِفُ اللّٰهُ وَعْدَهٗ وَلٰكِنَّ اَكْثَرَ النَّاسِ لَا يَعْلَمُوْنَ ⑦

७. अल्लाहले त्यो अङ्गीकार (गरेका छन्) । अल्लाहले आफ्नो अङ्गीकार कदापि भङ्ग गर्दैनन्, परन्तु अधिकतर मानिसहरूले जान्दैनन् ।

---

* म सर्वज्ञ अल्लाह हुँ ।

يَعْلَمُوْنَ ظَاهِرًا مِّنَ الْحَيٰوةِ الدُّنْيَا ۚ وَ هُمْ عَنِ الْاٰخِرَةِ هُمْ غٰفِلُوْنَ۞

८. तिनीहरूले (केवल) यस सांसारिक जीवनका प्रकाश्य (कुराहरू)लाई जान्दछन्, तथा परलोकका सम्बन्धमा भने तिनीहरू एकदमै अनभिज्ञ छन् ।

اَوَلَمْ يَتَفَكَّرُوْا فِيْٓ اَنْفُسِهِمْ ۗ مَا خَلَقَ اللّٰهُ السَّمٰوٰتِ وَالْاَرْضَ وَمَا بَيْنَهُمَآ اِلَّا بِالْحَقِّ وَ اَجَلٍ مُّسَمًّى ۗ وَ اِنَّ كَثِيْرًا مِّنَ النَّاسِ بِلِقَآئِ رَبِّهِمْ لَكٰفِرُوْنَ۞

९. के तिनीहरूले आफ्नो मनमा कहिल्यै सोचेका छैनन्? (अर्थात्) आकाशमण्डल र पृथ्वी तथा ती दुबैका बीचमा रहेका सम्पूर्ण वस्तुहरूलाई अल्लाहले सत्यज्ञानको आवश्यकता अनुसार र एउटा निर्धारित म्यादसम्मका निम्ति सिर्जना गरेका छन् । परन्तु मानिसहरूमध्ये धेरैजसोले भने आफ्ना प्रतिपालकसित हुने साक्षात्कारप्रति विश्वासै गर्दैनन् ।

اَوَلَمْ يَسِيْرُوْا فِى الْاَرْضِ فَيَنْظُرُوْا كَيْفَ كَانَ عَاقِبَةُ الَّذِيْنَ مِنْ قَبْلِهِمْ ۗ كَانُوْٓا اَشَدَّ مِنْهُمْ قُوَّةً وَّاَثَارُوا الْاَرْضَ وَعَمَرُوْهَآ اَكْثَرَ مِمَّا عَمَرُوْهَا وَ جَآءَتْهُمْ رُسُلُهُمْ بِالْبَيِّنٰتِ ۗ فَمَا كَانَ اللّٰهُ لِيَظْلِمَهُمْ وَ لٰكِنْ كَانُوْٓا اَنْفُسَهُمْ يَظْلِمُوْنَ۞

१०. के तिनीहरूले पृथ्वीमा भ्रमण गरी तिनीहरूभन्दा पहिलाका मानिसहरूको परिणाम (अन्त) कस्तो (नराम्रो) भएको थियो भन्ने कुरा अवलोकन गरेका छैनन् र? तिनीहरू यिनीहरूभन्दा अधिक शक्तिसम्पन्न थिए, तथा तिनीहरूले पृथ्वीलाई जोतखन गरी यिनीहरूले भन्दा अधिक (र उत्तम प्रकारले) त्यसलाई आवाद गरेका थिए । तथा तिनीहरूसमक्ष स्पष्ट चिह्नहरूका साथ तिनीहरूका सन्देशवाहकहरू आएका थिए । तथा तिनीहरूमाथि अल्लाहले अत्याचार गरेका थिएनन्, अपितु तिनीहरूले स्वयम् नै आफ्नो ज्यानमाथि अत्याचार गरेका थिए

ثُمَّ كَانَ عَاقِبَةَ الَّذِيْنَ اَسَآءُوا السُّوْٓاٰى اَنْ كَذَّبُوْا بِاٰيٰتِ اللّٰهِ وَ

११. त्यसपछि अपकर्म गर्ने व्यक्तिहरूको अन्त पनि अति नराम्रो भएको थियो, कारण तिनीहरूले अल्लाहका

كَانُوْا بِهَا يَسْتَهْزِءُوْنَ ⑪

चिह्नहरूलाई अस्वीकार गरेका थिए र तिनीहरूप्रति ठट्टापूर्वक व्यवहार गरेका थिए ।

اَللّٰهُ يَبْدَؤُا الْخَلْقَ ثُمَّ يُعِيْدُهٗ ثُمَّ اِلَيْهِ تُرْجَعُوْنَ ⑫

१२. अल्लाह नै सृष्टिको शुभारम्भ गर्छन्, त्यसपछि त्यसलाई बारम्बार दोहोऱ्याउँछन्, त्यसपछि तिमीहरूलाई उनीतर्फै फर्काएर लगिनेछ ।

وَ يَوْمَ تَقُوْمُ السَّاعَةُ يُبْلِسُ الْمُجْرِمُوْنَ ⑬

१३. तथा जब निर्धारित घडी उपस्थित हुनेछ त्यस दिन अपराधी व्यक्तिहरू निराश-हताश हुनेछन् ।

وَلَمْ يَكُنْ لَّهُمْ مِّنْ شُرَكَآئِهِمْ شُفَعٰٓؤُا وَكَانُوْا بِشُرَكَآئِهِمْ كٰفِرِيْنَ ⑭

१४. तथा जसलाई तिनीहरू (अल्लाहका) भागीदार तुल्याउने गर्थे, (तिनीहरूबाट) कोही तिनीहरूको सिफारिसकर्ता हुनेछैन, तथा जसलाई तिनीहरूले -अल्लाहका) भागीदार तुल्याएका थिए, (उनीहरूलाई) तिनीहरूले अस्वीकार गर्नेछन् ।

وَ يَوْمَ تَقُوْمُ السَّاعَةُ يَوْمَئِذٍ يَّتَفَرَّقُوْنَ ⑮

१५. तथा जब निर्धारित घडी आउनेछ, त्यसदिन तिनीहरू (परस्पर एक अर्काबाट) छुट्टिन पुग्नेछन् ।

فَاَمَّا الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ فَهُمْ فِيْ رَوْضَةٍ يُّحْبَرُوْنَ ⑯

१६. तब ती व्यक्तिहरूलाई सम्मानित गरिनेछ जसले विश्वास गर्थे र पुण्य कार्य गर्ने गर्थे, तथा एउटा बगैंचामा तिनीहरूलाई प्रसन्न तुल्याइनेछ ।

وَاَمَّا الَّذِيْنَ كَفَرُوْا وَكَذَّبُوْا بِاٰيٰتِنَا وَلِقَآئِ الْاٰخِرَةِ فَاُولٰٓئِكَ فِى الْعَذَابِ مُحْضَرُوْنَ ⑰

१७. परन्तु जसले अविश्वास गर्थे र हाम्रा निर्देशनहरूलाई अस्वीकार गर्थे तथा परलोकको साक्षात्कारप्रति अविश्वासी थिए, तिनीहरूलाई भने दण्डका सामु उपस्थित गरिनेछ ।

फَسُبْحٰنَ اللّٰهِ حِيْنَ تُمْسُوْنَ وَ حِيْنَ
تُصْبِحُوْنَ ﴿١٨﴾

१८. अतः जब तिमीहरू बेलुकीपखमा प्रवेश गर्छौ र जब बिहानीपखमा प्रवेश गर्छौ अल्लाहको गुणगान गर्ने गर ।

وَلَهُ الْحَمْدُ فِي السَّمٰوٰتِ وَالْاَرْضِ وَ
عَشِيًّا وَّحِيْنَ تُظْهِرُوْنَ ﴿١٩﴾

१९. आकाशमण्डल र पृथ्वीमा सम्पूर्ण प्रशंसाका उनी नै अधिकारी रहेका छन् - तथा मध्याह्नको समयमा र जब तिमीहरू घाम ढल्कने समयमा प्रवेश गर्छौ उनको गुणगान गर ।

يُخْرِجُ الْحَيَّ مِنَ الْمَيِّتِ وَ يُخْرِجُ
الْمَيِّتَ مِنَ الْحَيِّ وَ يُحْيِ الْاَرْضَ بَعْدَ
مَوْتِهَا ۚ وَكَذٰلِكَ تُخْرَجُوْنَ ﴿٢٠﴾

२०. मृतवस्तुबाट उनी जीवितवस्तु निकाल्छन्, तथा जीवितवस्तुबाट मृतवस्तु, तथा पृथ्वीलाई उनी उसको मृत्युपश्चात पुनः जीवन प्रदान गर्छन् । तथा ठीक त्यसै प्रकार तिमीहरूको पनि पुनरुत्थान हुनेछ ।

وَمِنْ اٰيٰتِهٖٓ اَنْ خَلَقَكُمْ مِّنْ تُرَابٍ ثُمَّ
اِذَآ اَنْتُمْ بَشَرٌ تَنْتَشِرُوْنَ ﴿٢١﴾

२१. तथा उनका चिह्नहरूमध्ये (एउटा चिह्न के पनि हो भने) उनले तिमीहरूलाई धुलोमाटोबाट सृष्टि गरे; त्यसपछि सुन ! तिमीहरू (पृथ्वीमा) फैलिने (र परिभ्रमण गर्ने) मानिस बन्न पुग्यौ ।

وَ مِنْ اٰيٰتِهٖٓ اَنْ خَلَقَ لَكُمْ مِّنْ
اَنْفُسِكُمْ اَزْوَاجًا لِّتَسْكُنُوْٓا اِلَيْهَا
وَجَعَلَ بَيْنَكُمْ مَّوَدَّةً وَّرَحْمَةً ۭ اِنَّ فِيْ
ذٰلِكَ لَاٰيٰتٍ لِّقَوْمٍ يَّتَفَكَّرُوْنَ ﴿٢٢﴾

२२. तथा उनका चिह्नहरूमध्ये (एउटा चिह्न के पनि हो भने), उनले तिमीहरूबाटै तिमीहरूका निम्ति जीवनसाथीहरू सृष्टि गरेका छन् ताकि तिमीहरूलाई तिनीहरूमा मनको शान्ति प्राप्त होस्, तथा उनले तिमीहरूका बीचमा प्रेम र सहानुभूतिको सम्बन्ध राखिदिएका छन् । यसमा चिन्तन-मनन् गर्ने मानिसहरूका निम्ति अवश्य चिह्नहरू रहेका छन् ।

२३. तथा उनका चिह्नहरूमध्ये आकाशमण्डल र पृथ्वीको सृष्टि तथा तिमीहरूको भाषा र रङ्गका बीच रहेको विभिन्नता पनि रहेको छ । ज्ञानवान व्यक्तिहरूका निम्ति यसमा निश्चयपूर्वक चिह्नहरू रहेका छन् ।

وَمِنْ اٰيٰتِهٖ خَلْقُ السَّمٰوٰتِ وَالْاَرْضِ وَاخْتِلَافُ اَلْسِنَتِكُمْ وَاَلْوَانِكُمْ ۚ اِنَّ فِيْ ذٰلِكَ لَاٰيٰتٍ لِّلْعٰلِمِيْنَ ﴿٢٢﴾

२४. तथा उनका चिह्नहरूमध्ये रात्री र दिनमा तिमीहरूले निद्रा लिनु, तथा तिमीहरूले उनको कृपा प्राप्तिका निम्ति प्रयत्न गर्नु पनि (चिह्न) रहेको छ । यसमा (ध्यानपूर्वक) सुन्ने व्यक्तिहरूका निम्ति निश्चय नै चिह्नहरू रहेका छन् ।

وَمِنْ اٰيٰتِهٖ مَنَامُكُمْ بِالَّيْلِ وَالنَّهَارِ وَابْتِغَآؤُكُمْ مِّنْ فَضْلِهٖ ۚ اِنَّ فِيْ ذٰلِكَ لَاٰيٰتٍ لِّقَوْمٍ يَّسْمَعُوْنَ ﴿٢٣﴾

२५. तथा उनका चिह्नहरूमध्ये (एउटा चिह्न के पनि रहेको छ भने), उनले तिमीहरूलाई डर र आशाको (श्रोतस्वरूप) बिजुली देखाउँछन्, तथा आकाशबाट उनी नै पानी बर्साउँछन् र त्यसद्वारा पृथ्वीलाई त्यसको मृत्युपश्चात् पुनः सजीव तुल्याउँछन् । त्यसमा बुद्धिमान व्यक्तिहरूका निम्ति निश्चय नै चिह्नहरू रहेका छन् ।

وَمِنْ اٰيٰتِهٖ يُرِيْكُمُ الْبَرْقَ خَوْفًا وَّطَمَعًا وَّيُنَزِّلُ مِنَ السَّمَآءِ مَآءً فَيُحْيٖ بِهِ الْاَرْضَ بَعْدَ مَوْتِهَا ۚ اِنَّ فِيْ ذٰلِكَ لَاٰيٰتٍ لِّقَوْمٍ يَّعْقِلُوْنَ ﴿٢٤﴾

२६. तथा उनका चिह्नहरूमध्ये (एउटा चिह्न के पनि रहेको छ भने), आकाशमण्डल र पृथ्वी उनकै आदेशानुसार (दृढतापूर्वक) खडा रहेका छन् । अतः जब उनले तिमीहरूलाई पृथ्वीबाट (निस्कन) बोलाउने छन् (तब) तिमी बाहिर निस्कनेछौ ।

وَمِنْ اٰيٰتِهٖٓ اَنْ تَقُوْمَ السَّمَآءُ وَالْاَرْضُ بِاَمْرِهٖ ۚ ثُمَّ اِذَا دَعَاكُمْ دَعْوَةً ۖ مِّنَ الْاَرْضِ ۖ اِذَآ اَنْتُمْ تَخْرُجُوْنَ ﴿٢٥﴾

२७. आकाशमण्डल र पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरू उनकै अधीनस्थ छन् । सबै उनका आज्ञाकारी छन् ।

وَلَهٗ مَنْ فِي السَّمٰوٰتِ وَالْاَرْضِ ۚ كُلٌّ لَّهٗ قٰنِتُوْنَ ﴿٢٦﴾

وَهُوَ الَّذِي يَبْدَؤُا الْخَلْقَ ثُمَّ يُعِيدُهُ وَهُوَ أَهْوَنُ عَلَيْهِ ۚ وَلَهُ الْمَثَلُ الْأَعْلَىٰ فِي السَّمَاوَاتِ وَالْأَرْضِ ۚ وَهُوَ الْعَزِيزُ الْحَكِيمُ ﴿٢٧﴾

२८. तथा ती उनी नै हुन्, जसले सृष्टिको शुभारम्भ गरी पुनः त्यसलाई (बारम्बार) दोहोऱ्याउँछन्, तथा त्यो कार्य उनका निम्ति अति सरल रहेको छ । आकाशमण्डल र पृथ्वीमा उनकै स्थान सर्वोच्च रहेको छ । तथा उनी परम पराक्रमी, परम तत्त्वज्ञ रहेका छन् ।

ضَرَبَ لَكُم مَّثَلًا مِّنْ أَنفُسِكُمْ ۖ هَل لَّكُم مِّن مَّا مَلَكَتْ أَيْمَانُكُم مِّن شُرَكَاءَ فِي مَا رَزَقْنَاكُمْ فَأَنتُمْ فِيهِ سَوَاءٌ تَخَافُونَهُمْ كَخِيفَتِكُمْ أَنفُسَكُمْ ۚ كَذَٰلِكَ نُفَصِّلُ الْآيَاتِ لِقَوْمٍ يَعْقِلُونَ ﴿٢٨﴾

२९. अल्लाहले तिमीहरूका निम्ति तिमीहरूसितै सम्बन्धित एउटा उपमाको वर्णन गरेका छन् । तिमीहरूका दाहिने हात जसका स्वामी बनेका छन् के तिनीहरू हामीले तिमीहरूलाई प्रदान गरेको सम्पत्तिमा भागीदार बन्न सक्छन्, ताकि तिनीहरू त्यसमा तिमीहरूका बराबरका (अंशियार) बनून् तथा तिमीहरू तिनीहरूसित त्यसरी नै डराऊ जसरी परस्पर एक-अर्कासित तिमीहरू डराउँछौ? यसै प्रकार बुद्धिमान मानिसहरूका निम्ति हामी विस्तृत रूपमा चिह्नहरू वर्णन गर्ने गर्छौं ।

بَلِ اتَّبَعَ الَّذِينَ ظَلَمُوا أَهْوَاءَهُم بِغَيْرِ عِلْمٍ ۖ فَمَن يَهْدِي مَنْ أَضَلَّ اللَّهُ ۖ وَمَا لَهُم مِّن نَّاصِرِينَ ﴿٢٩﴾

३०. होइन, अपितु अत्याचारी व्यक्तिहरू ज्ञानबिना नै आफ्ना निकृष्ट चाहनाहरूको अनुसरण गर्छन् । अतः जसलाई अल्लाहले पथभ्रष्ट घोषित गरेका छन् त्यसलाई कसले मार्ग देखाउन सक्छ र? तिनीहरूका कोही सहयोगी हुनेछैनन् ।

فَأَقِمْ وَجْهَكَ لِلدِّينِ حَنِيفًا ۚ فِطْرَتَ اللَّهِ الَّتِي فَطَرَ النَّاسَ عَلَيْهَا ۚ لَا تَبْدِيلَ لِخَلْقِ اللَّهِ ۚ ذَٰلِكَ الدِّينُ الْقَيِّمُ وَلَٰكِنَّ أَكْثَرَ النَّاسِ لَا يَعْلَمُونَ ﴿٣٠﴾

३१. अतः तिमी सदा (सत्यप्रति) समर्पित रही आफ्नो ध्यान धर्ममा केन्द्रित गर । तथा अल्लाहको त्यस प्रकृतिको (अनुसरण गर)- जसअन्तर्गत उनले सम्पूर्ण मानवजातिलाई सृष्टि गरेका छन्

। अल्लाहको सृष्टिमा कुनै परिवर्तन हुन सक्दैन, त्यही नै वास्तवमा सुदृढरूपमा स्थिर रहने र (अरूलाई) स्थिर रहन सहयोग पुऱ्याउने धर्म हो । परन्तु अधिकतर मानिसहरू जान्दैनन्* ।

مُنِيْبِيْنَ اِلَيْهِ وَاتَّقُوْهُ وَاَقِيْمُوا الصَّلٰوةَ وَلَا تَكُوْنُوْا مِنَ الْمُشْرِكِيْنَ ﴿٣١﴾

३२. तिमीहरू (प्रायश्चित गर्दै) उनैतर्फ झुक्दै (प्रतिपालकमा नै आफ्नो सम्पूर्ण ध्यान केन्द्रित गर), तथा उनीसित डराऊ, र नमाज अनुष्ठान गर, तथा ती व्यक्तिहरूमा सामेल नहोऊ, जसले (अल्लाहका) भागीदार तुल्याउने गर्छन्,

مِنَ الَّذِيْنَ فَرَّقُوْا دِيْنَهُمْ وَكَانُوْا شِيَعًا ۗ كُلُّ حِزْبٍ بِمَا لَدَيْهِمْ فَرِحُوْنَ ﴿٣٢﴾

३३. ती व्यक्तिहरूमा, जसले आफ्नो धर्मलाई टुक्रा टुक्रामा विभाजित तुल्याएका छन्, तथा तिनीहरू विभिन्न सम्प्रदायमा विभाजित भएका छन्, हरेक समूह आफ्नो टुक्राप्रति (मतप्रति) हार्षोल्लासित रहेको छ ।

وَاِذَا مَسَّ النَّاسَ ضُرٌّ دَعَوْا رَبَّهُمْ مُّنِيْبِيْنَ اِلَيْهِ ثُمَّ اِذَآ اَذَاقَهُمْ مِّنْهُ رَحْمَةً اِذَا فَرِيْقٌ مِّنْهُمْ بِرَبِّهِمْ يُشْرِكُوْنَ ﴿٣٣﴾

३४. तथा जब मानिसहरूमाथि कुनै सङ्कट आइलाग्छ, तिनीहरू (प्रायश्चित्त गर्दै) आफ्ना प्रतिपालकलाई एकनिष्ठताका साथ पुकार्छन्, अतः जब उनले तिनीहरूलाई आफ्नो करुणाद्वारा धन्य तुल्याउँछन्, तब हेर ! तिनीहरूमध्ये

---

टिप्पणी : यहाँ अल्लाहको प्रकृति भन्नाले उनका गुणहरुकै उल्लेख रहेको बुझिन्छ । उक्त सन्दर्भमा यसको के अर्थ बन्छ भने, "मानिसलाई अल्लाहका गुणहरुको अनुकरण गर्न सक्ने योग्यतायुक्त बनाइएको छ ।" एकमात्र यही यस्तो मार्ग हो जसद्वारा मानिसले आध्यात्मिक प्रगति गर्न सक्छ । स्पष्ट छ, अन्य प्राणीहरु भने मानिसको त्यस विलक्षण विशिष्टतामा सहभागी हुन सक्दैनन् अन्य शब्दमा भन्ने हो भने– अल्लाहको सान्निध्यता प्राप्ति उनका उत्तम गुणहरु अर्जित भएमा मात्र सम्भव हुन्छ । अन्ततः अल्लाह अनन्त छन् तथा मानिस सीमित छ भन्ने कुरो स्मरणीय छ । त्यस अवस्थामा मानिसले आफ्नो सीमित मानवीय सीमारेखाभित्र रहेर मात्रै उनको अनुकरण गर्न सक्छ ।

एउटा समूह भने आफ्ना प्रतिपालकका भागीदार तुल्याउन थाल्छ ।

لِيَكْفُرُوْا بِمَآ اٰتَيْنٰهُمْ ۚ فَتَمَتَّعُوْا ۥ فَسَوْفَ تَعْلَمُوْنَ ﴿٣٤﴾

३५. त्यसरी हामीले तिनीहरूलाई प्रदान गरेका वस्तुहरूप्रति तिनीहरू कृतघ्न बन्छन् । अतः (केही क्षणका निम्ति) तिमीहरू आनन्द उपभोग गर, परन्तु अति शिघ्र नै तिमीहरूले (वास्तविकता) जान्नेछौं

اَمْ اَنْزَلْنَا عَلَيْهِمْ سُلْطٰنًا فَهُوَ يَتَكَلَّمُ بِمَا كَانُوْا بِهٖ يُشْرِكُوْنَ ﴿٣٥﴾

३६. के हामीले तिनीहरूप्रति कुनै यस्तो प्रमाण अवतीर्ण गरेका छौं जसले तिनीहरूका (हकमा) बोल्छ जसलाई तिनीहरू उनका भागीदार तुल्याउँछन्?

وَاِذَآ اَذَقْنَا النَّاسَ رَحْمَةً فَرِحُوْا بِهَا ۚ وَاِنْ تُصِبْهُمْ سَيِّئَةٌ ۢ بِمَا قَدَّمَتْ اَيْدِيْهِمْ اِذَا هُمْ يَقْنَطُوْنَ ﴿٣٦﴾

३७. तथा जब हामी करुणाको स्वाद चखाएर मानवजातिमाथि अनुग्रह गर्छौं, तिनीहरू त्यसप्रति प्रसन्न हुन्छन्, परन्तु यदि तिनीहरूकै हातको (आफ्नै) कमाइका कारण तिनीहरूमाथि कुनै दुःख आइलागेमा, सुन ! तिनीहरू निराश हुन लाग्छन् ।

اَوَلَمْ يَرَوْا اَنَّ اللّٰهَ يَبْسُطُ الرِّزْقَ لِمَنْ يَّشَآءُ وَيَقْدِرُ ۚ اِنَّ فِيْ ذٰلِكَ لَاٰيٰتٍ لِّقَوْمٍ يُّؤْمِنُوْنَ ﴿٣٧﴾

३८. अल्लाहले जसका निम्ति इच्छा गर्छन् उसलाई विस्तृत(रूपमा) जीविका प्रदान गर्छन्, तथा (जसका निम्ति चाहन्छन् त्यसलाई) सङ्कीर्ण तुल्याउँछन् भन्ने कुरा तिनीहरूले देखेका छैनन् र? यस (कुरा)मा विश्वासीजनका निम्ति चिह्नहरू रहेका छन् ।

فَاٰتِ ذَا الْقُرْبٰى حَقَّهٗ وَالْمِسْكِيْنَ وَابْنَ السَّبِيْلِ ۚ ذٰلِكَ خَيْرٌ لِّلَّذِيْنَ يُرِيْدُوْنَ وَجْهَ اللّٰهِ ۫ وَاُولٰٓئِكَ هُمُ الْمُفْلِحُوْنَ ﴿٣٨﴾

३९. अतः तिम्रा निकटसम्बन्धी तथा अभावग्रस्त र पथिकलाई उसको अधिकार प्रदान गर । अल्लाहको अनुग्रह प्राप्त गर्न चाहनेहरूका निम्ति यो कुरा अत्योत्तम रहेको छ, तथा तिनै व्यक्तिहरू कृतार्थ

हुनेछन् ।

४०. मानिसहरूको सम्पत्तिमा बृद्धि होस् भनी जुन रकम तिमीहरू ब्याजमा लगाउँछौ, अल्लाहको दृष्टिमा त्यो (रकम) बढ्दैन, परन्तु अल्लाहको अनुग्रह प्राप्तिका निम्ति जुन (रकम) तिमीहरू जगातस्वरूप दिन्छौ- ती उनै व्यक्तिहरू हुन्,जसले (आफ्नो सम्पत्ति) अत्याधिक बढाउनेछन् ।

وَمَآ اٰتَيْتُمْ مِّنْ رِّبًا لِّيَرْبُوَا۟ فِىٓ اَمْوَالِ النَّاسِ فَلَا يَرْبُوْا عِنْدَ اللّٰهِ ۚ وَمَآ اٰتَيْتُمْ مِّنْ زَكٰوةٍ تُرِيْدُوْنَ وَجْهَ اللّٰهِ فَاُولٰٓئِكَ هُمُ الْمُضْعِفُوْنَ ﴿٣٩﴾

४१. ती अल्लाह नै हुन् जसले तिमीहरूलाई सृष्टि गरे, त्यसपछि उनले तिमीहरूलाई जीविका प्रदान गरे, त्यसपछि उनले तिमीहरूलाई मृत्यु प्रदान गर्नेछन्, (तथा) त्यसपछि उनले तिमीहरूलाई जीवित गर्नेछन् । के तिमीहरूले 'भागीदार तुल्याएका हरूमध्ये कोही यस्तो छ जसले यीमध्ये कुनै एउटा काम गर्न सकोस्? उनी पवित्र छन् तथा जसलाई तिनीहरू (उनका) भागीदार तुल्याउँछन् तिनीहरूभन्दा अति उच्च छन् ।

اَللّٰهُ الَّذِيْ خَلَقَكُمْ ثُمَّ رَزَقَكُمْ ثُمَّ يُمِيْتُكُمْ ثُمَّ يُحْيِيْكُمْ ۗ هَلْ مِنْ شُرَكَآئِكُمْ مَّنْ يَّفْعَلُ مِنْ ذٰلِكُمْ مِّنْ شَيْءٍ ۗ سُبْحٰنَهٗ وَتَعٰلٰى عَمَّا يُشْرِكُوْنَ ﴿٤٠﴾

४२. समुद्रमा र पृथ्वीमा मानिसहरूका हातको कमाइका कारण भ्रष्टाचार व्याप्त भएको छ, ताकि उनले तिनीहरूलाई तिनकै केही कर्मको (फल) चखाउन फलस्वरूप तिनीहरू दुष्कर्म त्यागी सद्मार्गतर्फ फर्किऊन् ।

ظَهَرَ الْفَسَادُ فِى الْبَرِّ وَالْبَحْرِ بِمَا كَسَبَتْ اَيْدِى النَّاسِ لِيُذِيْقَهُمْ بَعْضَ الَّذِيْ عَمِلُوْا لَعَلَّهُمْ يَرْجِعُوْنَ ﴿٤١﴾

४३. तिमी भन, 'तिमीहरू पृथ्वीमा भ्रमण गरेर हेर (तिमीहरूभन्दा) पहिलाका मानिसहरूको अन्त्य कस्तो नराम्रो भएको थियो । तिनीहरूमध्ये अधिकतर व्यक्तिहरू

قُلْ سِيْرُوْا فِى الْاَرْضِ فَانْظُرُوْا كَيْفَ كَانَ عَاقِبَةُ الَّذِيْنَ مِنْ قَبْلُ ۗ كَانَ اَكْثَرُهُمْ مُّشْرِكِيْنَ ﴿٤٢﴾

मूर्ति पुजक थिए ।

४४. अतः अल्लाहका तर्फबाट त्यस अटल दिनको आगमन हुनुअघि नै तिमी आफ्नो ध्यान पूर्णरूपमा त्यो सुस्थिर रहने र अरूलाई स्थिर रहन सहयोग पुऱ्याउने धर्मतर्फ केन्द्रित गर । त्यस दिन तिनीहरू परस्पर पृथक भई विभिन्न समूहमा विभाजित हुनेछन् ।

فَأَقِمْ وَجْهَكَ لِلدِّينِ الْقَيِّمِ مِنْ قَبْلِ أَنْ يَأْتِيَ يَوْمٌ لَّا مَرَدَّ لَهُ مِنَ اللَّهِ يَوْمَئِذٍ يَصَّدَّعُونَ

४५. अविश्वासी व्यक्तिहरूले आफ्नो अविश्वासको (परिणाम) उठाउनेछन् तथा पुण्य कार्य गर्ने व्यक्तिहरू भने आफ्नो (मङ्गल) प्राप्तिको तयारी गर्नेछन् ।

مَنْ كَفَرَ فَعَلَيْهِ كُفْرُهُ وَمَنْ عَمِلَ صَالِحًا فَلِأَنْفُسِهِمْ يَمْهَدُونَ

४६. ताकि उनले आफ्नो प्रचुर समृद्धिबाट ती विश्वासी र पुण्यकर्म गर्ने व्यक्तिहरूलाई प्रतिदान प्रदान गरुन् । निश्चय नै, उनले अविश्वासी व्यक्तिहरूलाई मन पराउँदैनन् ।

لِيَجْزِيَ الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ مِنْ فَضْلِهِ إِنَّهُ لَا يُحِبُّ الْكَافِرِينَ

४७. तथा उनका चिह्नहरूमध्ये (एउटा चिह्न के पनि रहेको छ) भने, हावालाई उनी शुभ सन्देशवाहकस्वरूप पठाउने गर्छन्, ताकि उनले तिमीहरूलाई आफ्नो करुणाको (स्वाद) चखाउन्, तथा उनकै आदेशानुसार (समुद्री) जहाजहरू चलून्, तथा तिमीहरू उनको कृपा प्राप्ति गर्ने प्रयास गर, ताकि तिमीहरू कृतज्ञ बन ।

وَمِنْ آيَاتِهِ أَنْ يُرْسِلَ الرِّيَاحَ مُبَشِّرَاتٍ وَلِيُذِيقَكُمْ مِنْ رَحْمَتِهِ وَلِتَجْرِيَ الْفُلْكُ بِأَمْرِهِ وَلِتَبْتَغُوا مِنْ فَضْلِهِ وَلَعَلَّكُمْ تَشْكُرُونَ

४८. तथा तिमीभन्दा पहिला हामीले सन्देशवाहकहरूलाई तिनीहरूका आफ्नै जाति (का मानिसहरू) तर्फ पठाएका थियौं, तथा तिनीहरूले उनीहरूसमक्ष स्पष्ट चिह्नहरू प्रस्तुत गरेका थिए । त्यसपछि अपराधी व्यक्तिहरूबाट हामीले

وَلَقَدْ أَرْسَلْنَا مِنْ قَبْلِكَ رُسُلًا إِلَى قَوْمِهِمْ فَجَاءُوهُمْ بِالْبَيِّنَاتِ فَانْتَقَمْنَا مِنَ الَّذِينَ أَجْرَمُوا وَكَانَ حَقًّا عَلَيْنَا نَصْرُ الْمُؤْمِنِينَ

प्रतिशोध लियौं। तथा विश्वासीहरूको सहयोग गर्नु निस्सन्देह हाम्रो कर्तव्य रहेको छ ।

اَللّٰهُ الَّذِيْ يُرْسِلُ الرِّيٰحَ فَتُثِيْرُ سَحَابًا فَيَبْسُطُهٗ فِي السَّمَآءِ كَيْفَ يَشَآءُ وَيَجْعَلُهٗ كِسَفًا فَتَرَى الْوَدْقَ يَخْرُجُ مِنْ خِلٰلِهٖ ۚ فَاِذَآ اَصَابَ بِهٖ مَنْ يَّشَآءُ مِنْ عِبَادِهٖٓ اِذَا هُمْ يَسْتَبْشِرُوْنَ ﴿٤٨﴾

४९. (ती) अल्लाह नै हुन् जसले हावा (वायु) पठाउँछन् ताकि तिनीहरूले बादल बहन गरुन् । त्यसपछि उनले त्यसलाई आकाशमा आफ्नो इच्छानुसार फैलाउँछन् तथा त्यसलाई एक माथि अर्को गरी खाप लगाउँछन् र त्यसैबाट तिमी पानी परेको देख्छौ । तथा उनले त्यसलाई आफ्ना भृत्यहरूमध्ये जसप्रति इच्छा गर्छन् बर्साउँछन्, तब हेर ! तिनीहरू हर्षित हुन पुग्छन्,

وَاِنْ كَانُوْا مِنْ قَبْلِ اَنْ يُّنَزَّلَ عَلَيْهِمْ مِّنْ قَبْلِهٖ لَمُبْلِسِيْنَ ﴿٤٩﴾

५०. यद्यपि त्यसअघि– (अर्थात्) तिनीहरूमाथि त्यो वर्षा बर्साउनुअघि– तिनीहरू निराश-हताश थिए ।

فَانْظُرْ اِلٰٓى اٰثٰرِ رَحْمَتِ اللّٰهِ كَيْفَ يُحْيِ الْاَرْضَ بَعْدَ مَوْتِهَا ۗ اِنَّ ذٰلِكَ لَمُحْيِ الْمَوْتٰى ۚ وَهُوَ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ﴿٥٠﴾

५१. त्यसकारण अल्लाहका करुणाका चिह्नहरूतर्फ हेर : कसरी उनी पृथ्वीलाई उसको मृत्युपश्चात् (पुनः) जीवित गर्छन् । तिनै (अल्लाह) ले मृतहरूलाई (पुनः) जीवित गर्नेछन्, किनभने सम्पूर्ण वस्तुहरूमाथि उनी पूर्ण सामर्थ्यवान् छन्

وَلَئِنْ اَرْسَلْنَا رِيْحًا فَرَاَوْهُ مُصْفَرًّا لَّظَلُّوْا مِنْۢ بَعْدِهٖ يَكْفُرُوْنَ ﴿٥١﴾

५२. तथा यदि हामीले हावा प्रवाह गरेमा तिनीहरूले त्यसलाई (आफ्नो खेतीलाई) पहेंलो हुन लागेको देखेमा, त्यसपछि, तिनीहरू अवश्य, (हाम्रो कृपाका) अस्वीकारी बन्न पुग्नेछन् ।

فَاِنَّكَ لَا تُسْمِعُ الْمَوْتٰى وَلَا تُسْمِعُ الصُّمَّ الدُّعَآءَ اِذَا وَلَّوْا مُدْبِرِيْنَ ﴿٥٢﴾

५३. तथा तिमीले मुर्दाहरूलाई (कुरा) सुनाउन सक्दैनौ, न त कानाहरूलाई तिमीले (त्यस अवस्थामा) आफ्ना कुरा सुनाउन सक्छौ जब तिनीहरू आफ्नो

पिठ्यू देखाएर विमुख हुन्छन् ।

५४. न तिमीले अन्धाहरूलाई तिनीहरूको पथ भ्रष्टताबाट निकालेर सन्मार्ग देखाउन सक्छौ । जुन व्यक्तिहरूले हाम्रा चिह्नहरूमाथि विश्वास गर्छन् तथा आज्ञाकारी बन्छन् तिमीले ता केवल तिनीहरूलाई सुनाउन सक्छौ ।

وَمَآ أَنْتَ بِهٰدِ الْعُمْيِ عَنْ ضَلٰلَتِهِمْ ؕ إِنْ تُسْمِعُ إِلَّا مَنْ يُّؤْمِنُ بِاٰيٰتِنَا فَهُمْ مُّسْلِمُوْنَ ﴿٥٤﴾

५५. ती अल्लाह नै हुन्, जसले तिमीहरूलाई दुर्बल (अवस्थाको) सृष्टि गरे, तथा दुर्बलतापश्चात् शक्ति प्रदान गरे, शक्तिपश्चात् पुनः दुर्बल र वृद्धावस्थामा पुऱ्याए । उनले जे इच्छा गर्छन् त्यही सृष्टि गर्छन् । उनी सर्वज्ञ, सर्वशक्तिसम्पन्न छन् ।

اَللّٰهُ الَّذِيْ خَلَقَكُمْ مِّنْ ضُعْفٍ ثُمَّ جَعَلَ مِنْۢ بَعْدِ ضُعْفٍ قُوَّةً ثُمَّ جَعَلَ مِنْۢ بَعْدِ قُوَّةٍ ضُعْفًا وَّشَيْبَةً ؕ يَخْلُقُ مَا يَشَآءُ ۚ وَهُوَ الْعَلِيْمُ الْقَدِيْرُ ﴿٥٥﴾

५६. तथा जब निर्धारित घडी आउनेछ, त्यसदिन अपराधी व्यक्तिहरूले तिनीहरू एक घडीबाहेक (संसारमा) रहेका थिएनन् भनी शपथ खानेछन्– यसै प्रकार तिनीहरूलाई (सन्मार्गबाट) विमुख तुल्याइएको थियो ।

وَيَوْمَ تَقُوْمُ السَّاعَةُ يُقْسِمُ الْمُجْرِمُوْنَ ۙ مَا لَبِثُوْا غَيْرَ سَاعَةٍ ؕ كَذٰلِكَ كَانُوْا يُؤْفَكُوْنَ ﴿٥٦﴾

५७. परन्तु जसलाई ज्ञान र विश्वास प्रदान गरिएको छ, तिनीहरूले भन्नेछन्, “तिमीहरू अल्लाहको गणनाअनुसार पुनरुत्थानको दिनसम्म (संसारमा) रहेका थियौ । तथा यही नै पुनरुत्थानको दिन हो, परन्तु तिमीहरूले जान्ने (प्रयत्न) गरेनौ ।”

وَقَالَ الَّذِيْنَ اُوْتُوا الْعِلْمَ وَالْاِيْمَانَ لَقَدْ لَبِثْتُمْ فِيْ كِتٰبِ اللّٰهِ اِلٰى يَوْمِ الْبَعْثِ ؗ فَهٰذَا يَوْمُ الْبَعْثِ وَلٰكِنَّكُمْ كُنْتُمْ لَا تَعْلَمُوْنَ ﴿٥٧﴾

५८. अतः त्यसदिन अत्याचारीहरूलाई तिनीहरूको उजुरले कुनै फाइदा दिनेछैन, न त तिनीहरूलाई (उनको) चौखुट

فَيَوْمَئِذٍ لَّا يَنْفَعُ الَّذِيْنَ ظَلَمُوْا مَعْذِرَتُهُمْ وَلَا هُمْ يُسْتَعْتَبُوْنَ ﴿٥٨﴾

अतिक्रमण गर्ने अनुमति दिइनेछ ।

५९. तथा साँचै नै, यस कुरानमा हामीले मानिसहरूका निम्ति हरेक प्रकारका दृष्टान्तहरू स्पष्टरूपमा वर्णन गरेका छौं, तथा यदि तिमीले तिनीहरूसमक्ष कुनै चिह्न प्रस्तुत गरेमा, अविश्वासी व्यक्तिहरूले अवश्य के भन्नेछन् भने, "तिमीहरू ता केवल मिथ्या कुरा गर्ने गर्छौ ।"

وَلَقَدْ ضَرَبْنَا لِلنَّاسِ فِيْ هٰذَا الْقُرْاٰنِ مِنْ كُلِّ مَثَلٍ ۭ وَلَىِٕنْ جِئْتَهُمْ بِاٰيَةٍ لَّيَقُوْلَنَّ الَّذِيْنَ كَفَرُوْٓا اِنْ اَنْتُمْ اِلَّا مُبْطِلُوْنَ ﴿٥٩﴾

६०. यसै प्रकार अज्ञानी व्यक्तिहरूको हृदयमाथि अल्लाहले मोहर गर्ने गर्छन्

كَذٰلِكَ يَطْبَعُ اللّٰهُ عَلٰى قُلُوْبِ الَّذِيْنَ لَا يَعْلَمُوْنَ ﴿٦٠﴾

६१. अतः तिमी धैर्यधारण गर । अल्लाहको वचन निश्चयपूर्वक सत्य रहेको छ, तथा जुन व्यक्तिहरू दृढ (विश्वासी) छैनन्, तिनीहरूले तिमीलाई हलुका (अस्थिर) नतुल्याउन् ।

فَاصْبِرْ اِنَّ وَعْدَ اللّٰهِ حَقٌّ وَّلَا يَسْتَخِفَّنَّكَ الَّذِيْنَ لَا يُوْقِنُوْنَ ﴿٦١﴾

سُوْرَةُ لُقْمٰنَ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ خَمْسٌ وَّثَلٰثُوْنَ اٰيَةً وَّاَرْبَعَةُ رُكُوْعَاتٍ

## लुक्मान

हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु अल्लाहको नाममा ।

الٓمّٓ ②

२. अलिफ लाम मिम[1] ।

تِلْكَ اٰيٰتُ الْكِتٰبِ الْحَكِيْمِ ③

३. यी तत्वज्ञानले परिपूर्ण पुस्तकका आयातहरू हुन्,

هُدًى وَّرَحْمَةً لِّلْمُحْسِنِيْنَ ④

४. (यो) पुण्यकार्य गर्ने व्यक्तिहरूका निम्ति मार्गदर्शन र करुणास्वरूप रहेको छ,

الَّذِيْنَ يُقِيْمُوْنَ الصَّلٰوةَ وَيُؤْتُوْنَ الزَّكٰوةَ وَهُمْ بِالْاٰخِرَةِ هُمْ يُوْقِنُوْنَ ⑤

५. ती व्यक्तिहरू जसले नमाज अनुष्ठान गर्छन् र जगात दिन्छन् तथा तिनीहरू परलोकमाथि दृढविश्वास राख्छन्

اُولٰٓئِكَ عَلٰى هُدًى مِّنْ رَّبِّهِمْ وَاُولٰٓئِكَ هُمُ الْمُفْلِحُوْنَ ⑥

६. ती उनै व्यक्तिहरू हुन् जसले आफ्ना प्रतिपालकका तर्फबाट आएको मार्गदर्शनको अनुसरण गर्छन् तथा तिनीहरू नै कृतार्थ हुने व्यक्तिहरू हुन् ।

وَمِنَ النَّاسِ مَنْ يَّشْتَرِيْ لَهْوَ الْحَدِيْثِ لِيُضِلَّ عَنْ سَبِيْلِ اللّٰهِ بِغَيْرِ عِلْمٍ ۖ وَّيَتَّخِذَهَا هُزُوًا ۗ اُولٰٓئِكَ لَهُمْ عَذَابٌ مُّهِيْنٌ ⑦

७. तथा मानिसहरूमध्ये कुनै व्यक्ति यस्तो पनि हुन्छ जसले (मार्गदर्शनको) सट्टामा व्यर्थ कुराहरू अपनाउँछ ताकि (मानिसहरूलाई) अल्लाहको मार्गबाट ज्ञानबिना नै पथभ्रष्ट तुल्याओस् र त्यसलाई ठट्टाको साधन बनाओस् । त्यस्ता व्यक्तिहरूलाई अपमानजनक

---

[1] म सर्वज्ञ अल्लाह हुँ ।

दण्ड मिल्नेछ ।

وَإِذَا تُتْلَىٰ عَلَيْهِ آيَاتُنَا وَلَّىٰ مُسْتَكْبِرًا كَأَن لَّمْ يَسْمَعْهَا كَأَنَّ فِي أُذُنَيْهِ وَقْرًا ۖ فَبَشِّرْهُ بِعَذَابٍ أَلِيمٍ ﴿٧﴾

८. तथा जब त्यससमक्ष हाम्रा निर्देशनहरू पढेर सुनाइन्छ, त्यो व्यक्ति तिनीहरूलाई नसुनेझैं गरी अहङ्कारका साथ मुख फर्काएर हिँड्छ, मानौं त्यसका दुबै कानमा बहिरोपना रहेको होस् । अतः त्यसलाई पीडादायक दण्डको सन्देश देउ ।

إِنَّ الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ لَهُمْ جَنَّاتُ النَّعِيمِ ﴿٨﴾

९. निश्चय नै जुन व्यक्तिहरूले विश्वास गर्छन् र पुण्यकार्य गर्छन्– तिनीहरूलाई अवश्य आनन्दपूर्ण उद्यानहरू प्रँपत हुनेछन्,

خَالِدِينَ فِيهَا ۖ وَعْدَ اللَّهِ حَقًّا ۚ وَهُوَ الْعَزِيزُ الْحَكِيمُ ﴿٩﴾

१०. जहाँ तिनीहरू सदा रहनेछन् । अल्लाहले साँचो अङ्गीकार गरेका छन्, तथा उनी परम पराक्रमी, परम तत्त्वज्ञ छन् ।

خَلَقَ السَّمَاوَاتِ بِغَيْرِ عَمَدٍ تَرَوْنَهَا ۖ وَأَلْقَىٰ فِي الْأَرْضِ رَوَاسِيَ أَن تَمِيدَ بِكُمْ وَبَثَّ فِيهَا مِن كُلِّ دَابَّةٍ ۚ وَأَنزَلْنَا مِنَ السَّمَاءِ مَاءً فَأَنبَتْنَا فِيهَا مِن كُلِّ زَوْجٍ كَرِيمٍ ﴿١٠﴾

११. आकाशमण्डललाई उनले कुनै खम्बा बिनाकै सृष्टि गरेका छन् भन्ने कुरा तिमीहरू देख्न सक्छौ, तथा उनले पृथ्वीमा दृढ पर्वतहरू स्थापना गरेका छन् ताकि तिनीहरू तिमीहरूसहित नडगमगाउन्, तथा उनले त्यहाँ सम्पूर्ण प्रकारका जीव-जन्तुहरू फैलाएका छन्, तथा बादलबाट हामीले पानी बर्साएका छौं, र (त्यसद्वारा) त्यहाँ हरेक प्रकारका उत्कृष्ट जोडीहरू (उद्भिदहरू) उमारेका छौं ।

هَٰذَا خَلْقُ اللَّهِ فَأَرُونِي مَاذَا خَلَقَ الَّذِينَ مِن دُونِهِ ۚ بَلِ الظَّالِمُونَ فِي ضَلَالٍ مُّبِينٍ ﴿١١﴾

१२. यो अल्लाहको सृष्टि हो । अतः उनीबाहेक अरूले के सृष्टि गरेका छन् मलाई देखाऊ । असम्भव, अपितु अत्याचारी व्यक्तिहरू स्पष्टरूपमा

पथभ्रष्ट हुन पुगेका छन् ।

وَلَقَدْ اٰتَيْنَا لُقْمٰنَ الْحِكْمَةَ اَنِ اشْكُرْ لِلّٰهِ ؕ وَمَنْ يَّشْكُرْ فَاِنَّمَا يَشْكُرُ لِنَفْسِهٖ ۚ وَمَنْ كَفَرَ فَاِنَّ اللّٰهَ غَنِيٌّ حَمِيْدٌ ﴿١٢﴾

१३. तथा हामीले लुक्मानलाई (के भन्दै) तत्त्वज्ञान प्रदान गरेका थियौं (भने), "अल्लाहका कृतज्ञ बन" अतः जो व्यक्ति कृतज्ञ बन्छ, त्यो केवल आफ्नै आत्माको (मङ्गल साधनका) निम्ति कृतज्ञ बन्छ । तथा जो व्यक्ति कृतघ्न बन्छ, ज्ञात रहोस्, अल्लाह निश्चयपूर्वक अभावहीन (पूर्णआत्मनिर्भर), प्रशंसनीय छन् ।

وَاِذْ قَالَ لُقْمٰنُ لِابْنِهٖ وَهُوَ يَعِظُهٗ يٰبُنَيَّ لَا تُشْرِكْ بِاللّٰهِ ؕ اِنَّ الشِّرْكَ لَظُلْمٌ عَظِيْمٌ ﴿١٣﴾

१४. तथा (स्मरण गर) जब लुक्मानले आफ्ना पुत्रलाई उपदेश गर्दै भनेका थिए, "ऐ मेरा प्रिय पुत्र ! अल्लाहका भागीदार नतुल्याउ । (अल्लाहका) भागीदार तुल्याउनु निश्चयपूर्वक एउटा घोर अत्याचार रहेको छ ।"

وَوَصَّيْنَا الْاِنْسَانَ بِوَالِدَيْهِ ۚ حَمَلَتْهُ اُمُّهٗ وَهْنًا عَلٰى وَهْنٍ وَّفِصٰلُهٗ فِيْ عَامَيْنِ اَنِ اشْكُرْ لِيْ وَلِوَالِدَيْكَ ؕ اِلَيَّ الْمَصِيْرُ ﴿١٤﴾

१५. तथा हामीले मानिसलाई उसका मातापिताका सम्बन्धमा विशेष आदेश दिएका छौं उसकी माताले उसलाई एउटा दुर्बल अवस्थादेखि अर्को दुर्बल अवस्थासम्म बहन गर्छे तथा त्यसको स्तनपानको अवधि दुइ वर्षको रहेको छ मेरो र आफ्ना मातापिताको धन्यवाद ज्ञापन गर । (अन्तमा) मतर्फै फर्केर आउनु पर्नेछ ।

وَاِنْ جَاهَدٰكَ عَلٰۤى اَنْ تُشْرِكَ بِيْ مَا لَيْسَ لَكَ بِهٖ عِلْمٌ ۙ فَلَا تُطِعْهُمَا وَصَاحِبْهُمَا فِي الدُّنْيَا مَعْرُوْفًا ۫ وَّاتَّبِعْ سَبِيْلَ مَنْ اَنَابَ اِلَيَّ ۚ ثُمَّ اِلَيَّ مَرْجِعُكُمْ فَاُنَبِّئُكُمْ بِمَا كُنْتُمْ تَعْمَلُوْنَ ﴿١٥﴾

१६. "तथा यदि तिनीहरूले तिमीसित जुन (वस्तु)हरूबारे तिमीलाई केही ज्ञान प्राप्त छैन त्यस्ता (वस्तु)हरूलाई मेरा भागीदार बनाउ भनी विवाद गरेमा, तिनीहरूको कुरो नमान, परन्तु (सबै) सांसारिक मामिलाहरूमा तिनीहरूसित सद्-व्यवहारपूर्ण सम्बन्ध राख, तथा

(आध्यात्मिक मामिलाहरूमा) भने त्यस व्यक्तिको मार्ग अनुसरण गर जो व्यक्ति मतर्फ झुकिरहन्छ । त्यसपछि तिमीहरूको प्रत्यावर्तन मतर्फै हुनेछ तथा म तिमीहरूलाई तिमीहरूले गर्ने गरेका कार्यहरूबारे अवगत गराउनेछु ।"

يٰبُنَيَّ اِنَّهَآ اِنْ تَكُ مِثْقَالَ حَبَّةٍ مِّنْ خَرْدَلٍ فَتَكُنْ فِيْ صَخْرَةٍ اَوْ فِي السَّمٰوٰتِ اَوْ فِي الْاَرْضِ يَاْتِ بِهَا اللّٰهُ ۭ اِنَّ اللّٰهَ لَطِيْفٌ خَبِيْرٌ ﴿١٧﴾

१७. "ऐ मेरा प्यारा पुत्र ! यद्यपि त्यो एउटा तोरीको दानाको तौल बराबर नै किन नहोस् र त्यो कुनै ढुङ्गोमुनि अथवा आकाशमण्डलमा, अथवा पृथ्वीमुनि लुकेको किन नहोस्, अल्लाहले त्यसलाई प्रकाशमा ल्याउने छन्, वस्तुतः अल्लाह सबै प्रकारका सूक्ष्म रहस्यहरूका ज्ञाता, सर्वसजग छन् ।

يٰبُنَيَّ اَقِمِ الصَّلٰوةَ وَاْمُرْ بِالْمَعْرُوْفِ وَانْهَ عَنِ الْمُنْكَرِ وَاصْبِرْ عَلٰي مَآ اَصَابَكَ ۭ اِنَّ ذٰلِكَ مِنْ عَزْمِ الْاُمُوْرِ ﴿١٨﴾

१८. "ऐ मेरा प्रिय पुत्र ! नमाज अनुष्ठान गर, तथा पुण्यकार्यको उपदेश देउ र अपकर्मबाट रोक, तथा तिमीमाथि जे परिआउँछ धैर्यसाथ सहन गर । निश्चय नै यी यस्ता कुराहरू हुन् (जसका लागि) दृढ निश्चयको (खाँचो छ) ।

وَلَا تُصَعِّرْ خَدَّكَ لِلنَّاسِ وَلَا تَمْشِ فِي الْاَرْضِ مَرَحًا ۭ اِنَّ اللّٰهَ لَا يُحِبُّ كُلَّ مُخْتَالٍ فَخُوْرٍ ﴿١٩﴾

१९. "तथा मानिसहरूबाट अहङ्कारका साथ आफ्नो मुहार नघुमाउ न त पृथ्वीमा घमण्डका साथ हिँड्ने गर, अल्लाहले निश्चयपूर्वक कुनै पनि अभिमानी र अहङ्कारी व्यक्तिलाई मन पराउँदैनन् ।

وَاقْصِدْ فِيْ مَشْيِكَ وَاغْضُضْ مِنْ صَوْتِكَ ۭ اِنَّ اَنْكَرَ الْاَصْوَاتِ لَصَوْتُ الْحَمِيْرِ ﴿٢٠﴾

२०. "तथा तिमी मध्यम गतिमा हिँड्ने गर र आफ्नो बोलीलाई मधुरो राख, वस्तुतः सबैभन्दा मन नपर्दो बोली गधाको बोली रहेको छ ।"

२१. आकाशमण्डल र पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरूलाई अल्लाहले तिमीहरूका सेवामा लगाएका छन् भन्ने कुरा तिमीहरूले देखेका छैनौ र? तथा उनले तिमीहरूमाथि आफ्नो अनुग्रह बाह्यिक र आन्तरिक (दुबै) रूपमा पूर्ण गरेका छैनन् र? तथा मानिसहरूमध्ये केही व्यक्तिहरू यस्ता पनि छन् जसले ज्ञान अथवा मार्गदर्शन अथवा कुनै स्पष्ट प्रमाणयुक्त पुस्तकबिना नै अल्लाहका सम्बन्धमा तर्क गर्ने गर्छन् ।

أَلَمْ تَرَوْا أَنَّ اللَّهَ سَخَّرَ لَكُم مَّا فِي السَّمَاوَاتِ وَمَا فِي الْأَرْضِ وَأَسْبَغَ عَلَيْكُمْ نِعَمَهُ ظَاهِرَةً وَبَاطِنَةً ۗ وَمِنَ النَّاسِ مَن يُجَادِلُ فِي اللَّهِ بِغَيْرِ عِلْمٍ وَلَا هُدًى وَلَا كِتَابٍ مُّنِيرٍ ﴿٢١﴾

२२. "अल्लाहले अवतीर्ण गरेका कुराहरूको अनुसरण गर" भनी जब तिनीहरूलाई भनिन्छ, तब तिनीहरू के भन्छन् भने, "होइन, (अपितु) हामी तिनै कुराहरूको अनुसरण गर्नेछौं जुन कुराहरूको हाम्रा पुर्खाहरूले अनुसरण गर्दै आएको हामीले पाएका छौं ।" के ! यदि शैतानले तिनीहरूलाई प्रज्वलित अग्नितर्फ आह्वान गरिरहेको भए तापनि?

وَإِذَا قِيلَ لَهُمُ اتَّبِعُوا مَا أَنزَلَ اللَّهُ قَالُوا بَلْ نَتَّبِعُ مَا وَجَدْنَا عَلَيْهِ آبَاءَنَا ۚ أَوَلَوْ كَانَ الشَّيْطَانُ يَدْعُوهُمْ إِلَىٰ عَذَابِ السَّعِيرِ ﴿٢١﴾

२३. तथा जसले स्वयम्लाई (पूर्णरूपमा) अल्लाहप्रति समपर्ण गर्छ तथा पुण्यकर्म गर्ने गर्छ, त्यस व्यक्तिले निश्चयपूर्वक एउटा सशक्त कडीलाई समात्यो । तथा सम्पूर्ण मामिलाहरूको परिणाम अल्लाहकै जुनाफमा (रहेको) छ

وَمَن يُسْلِمْ وَجْهَهُ إِلَى اللَّهِ وَهُوَ مُحْسِنٌ فَقَدِ اسْتَمْسَكَ بِالْعُرْوَةِ الْوُثْقَىٰ ۗ وَإِلَى اللَّهِ عَاقِبَةُ الْأُمُورِ ﴿٢٢﴾

२४. तथा जसले अविश्वास गर्छ, त्यसको अविश्वासले तिमीलाई दुःखित नतुल्याओस् । हामीतर्फै तिनीहरूको प्रत्यावर्तन हुनेछ तथा तिनीहरूले गरेका कार्यहरूबारे हामी तिनीहरूलाई सूचित गर्नेछौं, छातीभित्र के छ भन्ने कुराहरू

وَمَن كَفَرَ فَلَا يَحْزُنكَ كُفْرُهُ ۚ إِلَيْنَا مَرْجِعُهُمْ فَنُنَبِّئُهُم بِمَا عَمِلُوا ۚ إِنَّ اللَّهَ عَلِيمٌ بِذَاتِ الصُّدُورِ ﴿٢٣﴾

अल्लाहले निश्चय नै राम्ररी जान्दछन् ।

نُمَتِّعُهُمْ قَلِيلًا ثُمَّ نَضْطَرُّهُمْ إِلَىٰ عَذَابٍ غَلِيظٍ ﴿٢٤﴾

२५. केही समयसम्म तिनीहरूलाई हामी सुखभोग गर्न दिनेछौं, त्यसपछि तिनीहरूलाई हामी एउटा कठोर दण्डतर्फ हाँकेर लानेछौं ।

وَلَئِن سَأَلْتَهُم مَّنْ خَلَقَ السَّمَاوَاتِ وَالْأَرْضَ لَيَقُولُنَّ اللَّهُ ۚ قُلِ الْحَمْدُ لِلَّهِ ۚ بَلْ أَكْثَرُهُمْ لَا يَعْلَمُونَ ﴿٢٥﴾

२६. "आकाशमण्डल र पृथ्वी कसले सृष्टि गऱ्यो?" भनी यदि तिनीहरूलाई तिमीले सोधेमा, तिनीहरूले अवश्य के उत्तर दिनेछन् भने, "अल्लाहले"। तिमी भन, "सम्पूर्ण प्रशंसाका स्वामी अल्लाह नै रहेका छन् ।" परन्तु तिनीहरूमध्ये अधिकतर व्यक्तिहरू जान्दैनन् ।

لِلَّهِ مَا فِي السَّمَاوَاتِ وَالْأَرْضِ ۚ إِنَّ اللَّهَ هُوَ الْغَنِيُّ الْحَمِيدُ ﴿٢٦﴾

२७. आकाशमण्डल र पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरू अल्लाह कै हुन् । वस्तुतः अल्लाह अभावहीन, प्रशंसनीय छन् ।

وَلَوْ أَنَّمَا فِي الْأَرْضِ مِن شَجَرَةٍ أَقْلَامٌ وَالْبَحْرُ يَمُدُّهُ مِن بَعْدِهِ سَبْعَةُ أَبْحُرٍ مَّا نَفِدَتْ كَلِمَاتُ اللَّهِ ۗ إِنَّ اللَّهَ عَزِيزٌ حَكِيمٌ ﴿٢٧﴾

२८. यदि पृथ्वीमा रहेका सम्पूर्ण वृक्षहरू कलम हुन्थे भने, तथा महासागरहरू र त्यसपछि अन्य थप सातवटा समुद्रहरूसमेत मिलाई (मसी हुन्थे) भने पनि अल्लाहका वाणीहरू (लेखेर) टुंगिने थिएनन् । निश्चय नै अल्लाह परम पराक्रमी, तत्त्वज्ञ छन् ।

مَّا خَلْقُكُمْ وَلَا بَعْثُكُمْ إِلَّا كَنَفْسٍ وَاحِدَةٍ ۗ إِنَّ اللَّهَ سَمِيعٌ بَصِيرٌ ﴿٢٨﴾

२९. तिमीहरूको सृष्टि र तिमीहरूको पुनरुत्थान गर्ने कार्य केवल एउटै प्राणी (को सृष्टि र पुनरुत्थान गर्ने कार्य) बराबर रहेको छ । वस्तुतः अल्लाह सर्वस्रोता, सर्वद्रष्टा छन् ।

أَلَمْ تَرَ أَنَّ اللَّهَ يُولِجُ اللَّيْلَ فِي النَّهَارِ وَيُولِجُ النَّهَارَ فِي اللَّيْلِ وَسَخَّرَ الشَّمْسَ وَ

३०. अल्लाहले रात्रिलाई दिनमा र दिनलाई रात्रिमा दाखिल गर्छन्, तथा

الْقَمَرَ ز كُلٌّ يَّجْرِيْٓ اِلٰٓى اَجَلٍ مُّسَمًّى وَّاَنَّ اللّٰهَ بِمَا تَعْمَلُوْنَ خَبِيْرٌ ۝٢٩

सूर्य र चन्द्रमालाई उनले सेवामा खटाएका छन्, हरेक आफ्नो एउटा निर्धारित समयसम्म गतिशील छ, तथा तिमीहरूका कार्यहरूप्रति अल्लाह पूर्वविदित छन् भन्ने कुरा तिमीले देखेका छैनौ र?

ذٰلِكَ بِاَنَّ اللّٰهَ هُوَ الْحَقُّ وَاَنَّ مَا يَدْعُوْنَ مِنْ دُوْنِهِ الْبَاطِلُ ۙ وَّاَنَّ اللّٰهَ هُوَ الْعَلِيُّ الْكَبِيْرُ ۝٣٠

३१. यसको कारण के हो भने अल्लाह नै केवल एक साँचा (उपास्य) हुन्, तथा उनीबाहेक जसलाई तिनीहरू पुकार्छन् ती सबै मिथ्या हुन्, तथा केवल अल्लाह नै वास्तवमा सर्वोच्च र परम प्रतिष्ठावान् छन् ।

اَلَمْ تَرَ اَنَّ الْفُلْكَ تَجْرِيْ فِى الْبَحْرِ بِنِعْمَتِ اللّٰهِ لِيُرِيَكُمْ مِّنْ اٰيٰتِهٖ ۭ اِنَّ فِيْ ذٰلِكَ لَاٰيٰتٍ لِّكُلِّ صَبَّارٍ شَكُوْرٍ ۝٣١

३२. अल्लाह कै अनुग्रहद्वारा जहाजहरू समुद्रमा चल्छन् ताकि उनले तिमीहरूलाई आफ्ना चिह्नहरू देखाउन् भन्ने कुरा तिमीलाई थाहा छैन र? यस कुरामा हरेक धैर्यधारी (र) कृतज्ञ व्यक्तिका निम्ति चिह्नहरू रहेका छन् ।

وَاِذَا غَشِيَهُمْ مَّوْجٌ كَالظُّلَلِ دَعَوُا اللّٰهَ مُخْلِصِيْنَ لَهُ الدِّيْنَ ۚ فَلَمَّا نَجّٰىهُمْ اِلَى الْبَرِّ فَمِنْهُمْ مُّقْتَصِدٌ ۭ وَمَا يَجْحَدُ بِاٰيٰتِنَآ اِلَّا كُلُّ خَتَّارٍ كَفُوْرٍ ۝٣٢

३३. तथा जब पानीको लहरले तिनीहरूलाई (धेरैवटा) ओढ्नेले ढाके झैं ढाक्न लाग्छ, तब तिनीहरू एकाग्रता र निष्ठावान बनी अल्लाहलाई पुकार्छन्, परन्तु जब उनले तिनीहरूलाई सुरक्षित धर्तीमा पुऱ्याउँछन्, तब तिनीहरूमध्ये केही व्यक्तिहरू मात्र मध्यमार्गी बन्छन् । तथा विश्वासघाती (र) अकृतज्ञ व्यक्तिबाहेक अन्य कसैले हाम्रा निर्देशनहरूलाई अस्वीकार गर्दैनन् ।

يٰٓاَيُّهَا النَّاسُ اتَّقُوْا رَبَّكُمْ وَاخْشَوْا يَوْمًا لَّا يَجْزِيْ وَالِدٌ عَنْ وَّلَدِهٖ ز وَلَا مَوْلُوْدٌ

३४. हे मानिसहरू हो, आफ्ना प्रतिपालकसित उनको शरण याचना गर तथा त्यसदिनप्रति डराऊ जब कुनै पिताले आफ्नो पुत्रलाई कुनैप्रकारको

هُوَ جَازٍ عَنْ وَّالِدِهٖ شَيْـًٔا ۭ اِنَّ وَعْدَ اللّٰهِ حَقٌّ فَلَا تَغُرَّنَّكُمُ الْحَيٰوةُ الدُّنْيَا ٝ وَلَا يَغُرَّنَّكُمْ بِاللّٰهِ الْغَرُوْرُ ۝

लाभ पुऱ्याउन सक्नेछैन, न त पुत्र नै आफ्नो पिताको कुनै काम लाग्नेछ । अल्लाहको वचन नितान्त सत्य रहेको छ । त्यसकारण सांसारिक जीवनले तिमीहरूलाई धोकाग्रस्त नतुल्याओस्, न कुनै धोकेबाज व्यक्तिले तिमीहरूलाई अल्लाहका सम्बन्धमा धोका देओस् ।

اِنَّ اللّٰهَ عِنْدَهٗ عِلْمُ السَّاعَةِ ۚ وَيُنَزِّلُ الْغَيْثَ ۚ وَيَعْلَمُ مَا فِى الْاَرْحَامِ ۭ وَمَا تَدْرِيْ نَفْسٌ مَّاذَا تَكْسِبُ غَدًا ۭ وَمَا تَدْرِيْ نَفْسٌۢ بِاَيِّ اَرْضٍ تَمُوْتُ ۭ اِنَّ اللّٰهَ عَلِيْمٌ خَبِيْرٌ ۝

३५. वस्तुतः निर्धारित घडीको (प्रलयको) ज्ञान केवल अल्लाहलाई प्राप्त छ । तथा उनी नै पानी बर्साउँछन्, तथा गर्भमा रहेको वस्तुलाई उनैले जान्दछन् । तथा कुनै आत्माले भोलि उसले के आर्जन गर्नेछ भन्ने कुरा जान्दैन, तथा कुनै आत्माले कुन स्थानमा उसको मृत्य हुनेछ भन्ने कुरा जान्दैन । अल्लाह सर्वज्ञ, सर्वविदित छन् ।




## अल्– सज्दा
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

الٓمّٓ ②

२. अलिफ लाम मिम*

تَنْزِيْلُ الْكِتٰبِ لَا رَيْبَ فِيْهِ مِنْ رَّبِّ الْعٰلَمِيْنَ ③

३. यस पुस्तकको अवतरण सम्पूर्ण विश्व-ब्रह्माण्डका स्वामीका तर्फबाट भएको हो भन्ने कुरामा कुनै सन्देह छैन ।

اَمْ يَقُوْلُوْنَ افْتَرٰىهُ ۚ بَلْ هُوَ الْحَقُّ مِنْ رَّبِّكَ لِتُنْذِرَ قَوْمًا مَّآ اَتٰىهُمْ مِّنْ نَّذِيْرٍ مِّنْ قَبْلِكَ لَعَلَّهُمْ يَهْتَدُوْنَ ④

४. के "त्यो उसले स्वयम् गढेको हो" भनी तिनीहरू भन्छन् त? होइन, (अपितु) यो ता तिम्रा प्रतिपालकका तर्फबाट आएको नितान्त सत्य हो ताकि तिमी त्यसद्वारा यस्ता मानिसहरूलाई सतर्क गर जसतर्फ तिमीभन्दा पहिला कुनै सावधानकर्ताको आगमन भएको छैन, ताकि तिनीहरूले मार्गदर्शनको अनुसरण गरून् ।

اَللّٰهُ الَّذِيْ خَلَقَ السَّمٰوٰتِ وَالْاَرْضَ وَمَا بَيْنَهُمَا فِيْ سِتَّةِ اَيَّامٍ ثُمَّ اسْتَوٰى عَلَى الْعَرْشِ ۖ مَا لَكُمْ مِّنْ دُوْنِهٖ مِنْ وَّلِيٍّ وَّلَا شَفِيْعٍ ۚ اَفَلَا تَتَذَكَّرُوْنَ ⑤

५. ती अल्लाह नै हुन्, जसले आकाशमण्डल र पृथ्वीलाई र तिनीहरूका बीचमा रहेका सम्पूर्ण वस्तुहरूलाई छ समयावधिमा सृष्टि गरे, त्यसपछि उनी महासिंहासनमा विराजमान भए । उनीबाहेक तिमीहरूको न कोही सहयोगी छ न त कोही सिफारिसकर्ता नै । अत: के तिमीहरू उपदेश प्राप्त गर्दैनौ त ?

يُدَبِّرُ الْاَمْرَ مِنَ السَّمَآءِ اِلَى الْاَرْضِ ثُمَّ يَعْرُجُ اِلَيْهِ فِيْ يَوْمٍ كَانَ مِقْدَارُهٗ

६. उनले आकाशमण्डलदेखि लिएर पृथ्वीसम्म आफ्नो (आध्यात्मिक) विधान

---

* म सर्वज्ञ अल्लाह हुँ ।

اَلْفَ سَنَةٍ مِّمَّا تَعُدُّوْنَ ۝٥

स्थापना गर्नेछन्, त्यसपछि एउटा यस्तो दिनमा त्यसले उनीतर्फ आरोहण गर्नेछ जसको अन्तराल तिमीहरूको गणनानुसार हजार वर्षको हुन्छ ।

ذٰلِكَ عٰلِمُ الْغَيْبِ وَالشَّهَادَةِ الْعَزِيْزُ الرَّحِيْمُ ۝٦

७. उनी नै अदृश्य र दृश्य कुराहरूका ज्ञाता, परम पराक्रमी, परम करुणाशील अल्लाह हुन्,

الَّذِيْٓ اَحْسَنَ كُلَّ شَيْءٍ خَلَقَهٗ وَبَدَاَ خَلْقَ الْاِنْسَانِ مِنْ طِيْنٍ ۝٧

८. जसले आफ्ना सृष्टिमध्ये हरेक वस्तुलाई सुदृढ तुल्याएका छन् । तथा उनले गिलो माटोबाट मानिसको सिर्जना (कार्य) प्रारम्भ गरे ।

ثُمَّ جَعَلَ نَسْلَهٗ مِنْ سُلٰلَةٍ مِّنْ مَّآءٍ مَّهِيْنٍ ۝٨

९. त्यसपछि त्यसका वंशलाई उनले एउटा तुच्छ तरल पदार्थको निष्कर्षबाट सिर्जना गरे ।

ثُمَّ سَوّٰىهُ وَنَفَخَ فِيْهِ مِنْ رُّوْحِهٖ وَجَعَلَ لَكُمُ السَّمْعَ وَالْاَبْصَارَ وَالْاَفْـِٕدَةَ ۚ قَلِيْلًا مَّا تَشْكُرُوْنَ ۝٩

१०. त्यसपछि उनले त्यसलाई स्थिरता प्रदान गरे, र त्यसमा आफ्ना तर्फबाट आत्मा प्रविष्टि गरे । तथा उनले तिमीहरूलाई कान, तथा, आँखा र हृदय* प्रदान गरेका छन् । परन्तु तिमीहरू पटक्कै कृतज्ञता ज्ञापन गर्दैनौ ।

وَقَالُوْٓا ءَاِذَا ضَلَلْنَا فِي الْاَرْضِ ءَاِنَّا لَفِيْ خَلْقٍ جَدِيْدٍ ۚ بَلْ هُمْ بِلِقَآئِ رَبِّهِمْ كٰفِرُوْنَ ۝١٠

११. तथा तिनीहरू भन्छन्, "के ! पृथ्वीमा हामी विलीन भएपश्चात् पुनः हामी एउटा नवीन सृष्टिको रूपमा खडा हुनेछौं त?" होइन, अपितु तिनीहरू आफ्ना प्रतिपालकसित हुने साक्षातकार प्रति विश्वास गर्दैनन् ।

---

* फूआद ( فؤاد ) शब्दको अर्थ पवित्र कुरानको प्रयोगानुसार केवल हृदय मात्र नभएर, त्यसले समझदारी (बुद्धि) को चरमसीमातर्फ पनि सङ्केत गर्छ । हेर्नुहोस् २८:११ (अल्-क़सस्), ५३:१२ (अल्- नज्म्), ४६:२७ (अल्- अहक़ाफ) तथा १४:३८ (इब्राहिम) ।

१२. तिमी भन, "तिमीहरूमाथि नियुक्त गरिएको मृत्युको फरिस्ताले अवश्य तिमीहरूको प्राण लिनेछ, त्यसपछि तिमीहरूलाई आफ्ना प्रतिपालकतर्फ फर्काएर लगिनेछ ।"

قُلْ يَتَوَفّٰىكُمْ مَّلَكُ الْمَوْتِ الَّذِيْ وُكِّلَ بِكُمْ ثُمَّ اِلٰى رَبِّكُمْ تُرْجَعُوْنَ ۝١١

१३. जब अपराधी व्यक्तिहरू नतमस्तक गरी आफ्ना प्रतिपालकसमक्ष खडा हुनेछन्, यदि तिमीले त्यो दृश्य देख्न सक्ने भए ! (तिनीहरूले भन्नेछन्), "हे हाम्रा प्रतिपालक, हामीले देख्यौं तथा हामीले सुन्यौं, त्यसकारण हामीलाई फर्काएर पठाउ ताकि हामी पुण्यकर्म गरौं, किनभने (अब) हामी (तिम्रा कुराप्रति) विश्वस्त भएका छौं ।"

وَلَوْ تَرٰٓى اِذِ الْمُجْرِمُوْنَ نَاكِسُوْا رُءُوْسِهِمْ عِنْدَ رَبِّهِمْ ۭ رَبَّنَآ اَبْصَرْنَا وَسَمِعْنَا فَارْجِعْنَا نَعْمَلْ صَالِحًا اِنَّا مُوْقِنُوْنَ ۝١٢

१४. तथा यदि (हामीले) हाम्रो इच्छा (लादेको) भए प्रत्येक व्यक्तिलाई उसको सन्मार्ग प्रदान गर्ने थियौं, परन्तु "जिन्न र मानिस सबैद्वारा म नर्कलाई भर्नेछु" भन्ने मेरो वचन पूर्ण भएको छ ।

وَلَوْ شِئْنَا لَاٰتَيْنَا كُلَّ نَفْسٍ هُدٰىهَا وَلٰكِنْ حَقَّ الْقَوْلُ مِنِّيْ لَاَمْلَـَٔنَّ جَهَنَّمَ مِنَ الْجِنَّةِ وَالنَّاسِ اَجْمَعِيْنَ ۝١٣

१५. अतः आफ्नो यो आजको दिनको आगमनलाई भुलेका हुनाले (तिमीहरू आफ्नो कर्मको दण्ड चाख) । हामीले (पनि) तिमीहरूलाई भुलेका छौं । तथा आफूले गर्ने गरेका कार्यहरूको फलस्वरूप दीर्घस्थायी दण्डको स्वाद चाख ।

فَذُوْقُوْا بِمَا نَسِيْتُمْ لِقَآءَ يَوْمِكُمْ هٰذَا ۚ اِنَّا نَسِيْنٰكُمْ وَذُوْقُوْا عَذَابَ الْخُلْدِ بِمَا كُنْتُمْ تَعْمَلُوْنَ ۝١٤

१६. निश्चय नै, केवल उनै व्यक्तिहरूले हाम्रा निर्देशनहरूप्रति विश्वास गर्छन् जसलाई तिनीहरूको स्मरण गराएपछि, सष्टाङ्ग दण्डवत गर्छन् र आफ्ना प्रतिपालकको गुणगान गर्छन् तथा तिनीहरू अहङ्कार गर्दैनन् ।

اِنَّمَا يُؤْمِنُ بِاٰيٰتِنَا الَّذِيْنَ اِذَا ذُكِّرُوْا بِهَا خَرُّوْا سُجَّدًا وَّسَبَّحُوْا بِحَمْدِ رَبِّهِمْ وَهُمْ لَا يَسْتَكْبِرُوْنَ ۝١٥

१७. बिछ्यौनाबाट तिनीहरूका पार्श्वहरू अलग्गै रहने गर्छन्, (तथा) आफ्ना प्रतिपालकलाई तिनीहरू भय र आशाका साथ पुकार्ने गर्छन्, तथा हामीले तिनीहरूलाई प्रदान गरेका वस्तुहरूबाट तिनीहरू (अल्लाहको मार्गमा) खर्च गर्ने गर्छन् ।

تَتَجَافٰى جُنُوْبُهُمْ عَنِ الْمَضَاجِعِ يَدْعُوْنَ رَبَّهُمْ خَوْفًا وَّطَمَعًا ز وَّمِمَّا رَزَقْنٰهُمْ يُنْفِقُوْنَ ﴿١٦﴾

१८. तथा कुनै व्यक्तिले तिनीहरूका पुण्य कार्यको प्रतिदानस्वरूप कस्तो नेत्र शान्ति (शीतलता) तिनीहरूका निम्ति गोप्य राखिएको छ भन्ने कुरा जान्दैन ।

فَلَا تَعْلَمُ نَفْسٌ مَّآ اُخْفِيَ لَهُمْ مِّنْ قُرَّةِ اَعْيُنٍ ج جَزَآءًۢ بِمَا كَانُوْا يَعْمَلُوْنَ ﴿١٧﴾

१९. अतः कुनै विश्वासी व्यक्ति अवज्ञाकारी व्यक्तिझैं हुनसक्छ र? तिनीहरू (कदापि) एकसमान हुन सक्दैनन् ।

اَفَمَنْ كَانَ مُؤْمِنًا كَمَنْ كَانَ فَاسِقًا ؕ لَا يَسْتَوٗنَ ﴿١٨﴾

२०. जुन व्यक्तिहरू विश्वास गर्छन् तथा पुण्यकार्य गर्छन् तिनीहरूलाई भने तिनीहरूले गर्ने गरेका कार्यहरूको सट्टामा आतिथ्यस्वरूप सदा रहने बगैंचाहरू प्राप्त हुनेछन् ।

اَمَّا الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ فَلَهُمْ جَنّٰتُ الْمَاْوٰى ز نُزُلًاۢ بِمَا كَانُوْا يَعْمَلُوْنَ ﴿١٩﴾

२१. तथा अवज्ञाकारी व्यक्तिहरूको निवासस्थान भने अग्नि हुनेछ । जब तिनीहरू त्यहाँबाट निस्कन चाहन्छन्, तिनीहरूलाई पुनः त्यसैभित्र फर्काइनेछ, तथा तिनीहरूलाई के भनिनेछ भने, "तिमीहरू त्यस अग्निको दण्ड भोग जसलाई तिमीहरू अस्वीकार गर्ने गर्थ्यौ ।"

وَاَمَّا الَّذِيْنَ فَسَقُوْا فَمَاْوٰىهُمُ النَّارُ ؕ كُلَّمَآ اَرَادُوْٓا اَنْ يَّخْرُجُوْا مِنْهَآ اُعِيْدُوْا فِيْهَا وَقِيْلَ لَهُمْ ذُوْقُوْا عَذَابَ النَّارِ الَّذِيْ كُنْتُمْ بِهٖ تُكَذِّبُوْنَ ﴿٢٠﴾

२२. तथा ठूलो दण्डभन्दा पहिला हामी तिनीहरूलाई निश्चयपूर्वक सानो दण्डको स्वाद चखाउनेछौं, ताकि तिनीहरू (प्रायश्चित् गरी हामीतर्फ) फर्किऊन् ।

وَلَنُذِيْقَنَّهُمْ مِّنَ الْعَذَابِ الْاَدْنٰى دُوْنَ الْعَذَابِ الْاَكْبَرِ لَعَلَّهُمْ يَرْجِعُوْنَ ﴿٢١﴾

२३. तथा जो व्यक्ति आफ्ना प्रतिपालकका चिह्नहरू सुनेर पनि विमुख हुन्छ त्यो व्यक्तिभन्दा ठूलो अत्याचारी अन्य को हुन सक्छ र? अपराधीलाई हामी अवश्य नै दण्ड दिनेछौं ।

وَمَنْ أَظْلَمُ مِمَّنْ ذُكِّرَ بِآيَاتِ رَبِّهِ ثُمَّ أَعْرَضَ عَنْهَا ۚ إِنَّا مِنَ الْمُجْرِمِينَ مُنْتَقِمُونَ ﴿٢٢﴾

२४. तथा हामीले मूसालाई पुस्तक प्रदान गरेका थियौं– त्यसकारण त्यसको प्राप्तिका सम्बन्धमा तिमी सन्देह नगर– तथा त्यसलाई हामीले इजरायलका सन्तानका निम्ति मार्गदर्शन बनाएका थियौं ।

وَلَقَدْ آتَيْنَا مُوسَى الْكِتَابَ فَلَا تَكُنْ فِي مِرْيَةٍ مِنْ لِقَائِهِ ۖ وَجَعَلْنَاهُ هُدًى لِبَنِي إِسْرَائِيلَ ﴿٢٣﴾

२५. तथा तिनीहरूबाटै हामीले यस्ता (धार्मिक) नेता बनायौं, जसले (मानिसहरूलाई) हाम्रो आदेशानुसार मार्ग देखाउँथे, कारण तिनीहरू (स्वयम्) धैर्यधारी थिए, तथा हाम्रा निर्देशनहरूप्रति दृढ विश्वासी थिए ।

وَجَعَلْنَا مِنْهُمْ أَئِمَّةً يَهْدُونَ بِأَمْرِنَا لَمَّا صَبَرُوا ۖ وَكَانُوا بِآيَاتِنَا يُوقِنُونَ ﴿٢٤﴾

२६. वस्तुत: तिम्रा प्रतिपालक उनै हुन्- जसले पुनरुत्थानका दिन तिनीहरूले मतभेद गर्ने गरेका कुराहरूका सम्बन्धमा तिनीहरूका बीचमा निर्णय गर्नेछन् ।

إِنَّ رَبَّكَ هُوَ يَفْصِلُ بَيْنَهُمْ يَوْمَ الْقِيَامَةِ فِيمَا كَانُوا فِيهِ يَخْتَلِفُونَ ﴿٢٥﴾

२७. तिनीहरूभन्दा पहिलाका यस्ता कति वंशहरूलाई हामीले विनाश गरेका छौं जसका घरहरूमा (आज) तिनीहरू हिँड्ने-डुल्ने गर्छन् भन्ने कुराले तिनीहरूलाई मार्ग देखाएको छैन र? यस कुरामा निश्चयपूर्वक धेरै चिह्नहरू छन् । अत: के तिनीहरू सुन्दैनन् त?

أَوَلَمْ يَهْدِ لَهُمْ كَمْ أَهْلَكْنَا مِنْ قَبْلِهِمْ مِنَ الْقُرُونِ يَمْشُونَ فِي مَسَاكِنِهِمْ ۚ إِنَّ فِي ذَٰلِكَ لَآيَاتٍ ۖ أَفَلَا يَسْمَعُونَ ﴿٢٦﴾

२८. सुख्खा जमिनतर्फ पानी लगेर हामी त्यसद्वारा खेती -अन्न) उत्पन्न गर्छौं जसलाई तिनीहरूका जनावरहरूले र स्वयम् तिनीहरूले खाने गर्छन् भन्ने कुरा तिनीहरूले देखेका छैनन् र? तथापि के तिनीहरू देख्दैनन् त?

أَوَلَمْ يَرَوْا أَنَّا نَسُوقُ الْمَاءَ إِلَى الْأَرْضِ الْجُرُزِ فَنُخْرِجُ بِهِ زَرْعًا تَأْكُلُ مِنْهُ أَنْعَامُهُمْ وَأَنْفُسُهُمْ ۖ أَفَلَا يُبْصِرُونَ ﴿٢٧﴾

२९. तथा तिनीहरू भन्छन्, "यदि तिमीहरू साँचा हौ भने त्यो विजय (को घडी) कहिले आउनेछ त ?

وَيَقُوْلُوْنَ مَتٰى هٰذَا الْفَتْحُ اِنْ كُنْتُمْ صٰدِقِيْنَ ﴿٢٩﴾

३०. तिमी भन, "त्यस विजयका दिन अविश्वासीहरूलाई तिनीहरूको विश्वासले केही फाइदा दिनेछैन, न त तिनीहरूलाई कुनै अवसर दिइनेछ ।"

قُلْ يَوْمَ الْفَتْحِ لَا يَنْفَعُ الَّذِيْنَ كَفَرُوْٓا اِيْمَانُهُمْ وَلَا هُمْ يُنْظَرُوْنَ ﴿٣٠﴾

३१. अतः तिमी तिनीहरूबाट अलग्गै रहने गर, र प्रतीक्षा गर, तिनीहरूले पनि प्रतीक्षा गर्नेछन् ।

فَاَعْرِضْ عَنْهُمْ وَانْتَظِرْ اِنَّهُمْ مُّنْتَظِرُوْنَ ﴿٣١﴾

سُوْرَةُ الْاَحْزَابِ مَدَنِيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ اَرْبَعٌ وَّسَبْعُوْنَ اٰيَةً وَّتِسْعَةُ رُكُوْعَاتٍ

## अल्- अह्ज़ाब
(हिजरतपछि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१ परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

يٰۤاَيُّهَا النَّبِيُّ اتَّقِ اللّٰهَ وَلَا تُطِعِ الْكٰفِرِيْنَ وَ الْمُنٰفِقِيْنَ ؕ اِنَّ اللّٰهَ كَانَ عَلِيْمًا حَكِيْمًا ②

२. हे नबी, अल्लाहको शरण लेउ, तथा अविश्वासी र ढोंगी व्यक्तिहरूका (अभिलाषा)हरूको अनुसरण नगर । वस्तुतः अल्लाह सर्वज्ञ, तत्वज्ञ छन् ।

وَّاتَّبِعْ مَا يُوْحٰۤى اِلَيْكَ مِنْ رَّبِّكَ ؕ اِنَّ اللّٰهَ كَانَ بِمَا تَعْمَلُوْنَ خَبِيْرًا ③

३. तथा जुन कुरा तिमीप्रति तिम्रा प्रतिपालकका तर्फबाट अवतीर्ण गरिन्छ त्यसैको अनुसरण गर । वस्तुतः तिमीहरूका कार्यहरूप्रति अल्लाह पूर्णविदित छन् ।

وَّتَوَكَّلْ عَلَى اللّٰهِ ؕ وَكَفٰى بِاللّٰهِ وَكِيْلًا ④

४. तथा अल्लाहमाथि तिमी आफ्नो भरोसा राख, संरक्षकस्वरूप अल्लाह नै पर्याप्त रहेका छन् ।

مَا جَعَلَ اللّٰهُ لِرَجُلٍ مِّنْ قَلْبَيْنِ فِيْ جَوْفِهٖ ۚ وَمَا جَعَلَ اَزْوَاجَكُمُ الّٰٓـِٔيْ تُظٰهِرُوْنَ مِنْهُنَّ اُمَّهٰتِكُمْ ۚ وَمَا جَعَلَ اَدْعِيَآءَكُمْ اَبْنَآءَكُمْ ؕ ذٰلِكُمْ قَوْلُكُمْ بِاَفْوَاهِكُمْ ؕ وَاللّٰهُ يَقُوْلُ الْحَقَّ وَهُوَ يَهْدِى السَّبِيْلَ ⑤

५. कुनै मानिसको छातीभित्र अल्लाहले दुईवटा हृदय बनाएका छैनन्, न त तिमीहरूका ती पत्नीहरूलाई तिमीहरूले आमा भन्दैमा, र त्यसो भनेकै कारण तिनीहरूसित दाम्पत्य सम्बन्ध त्यागदैमा उनले तिनीहरूलाई तिमीहरूकी मातामा परिवर्तन गर्छन्, न तिमीहरूका दत्तकपुत्रलाई उनले तिमीहरूका प्रकृत पुत्रमा परिवर्तन गर्छन् । त्यो तिमीहरूको मुखको (व्यर्थ) कुरो मात्र हो, परन्तु अल्लाह सत्य कुरो गर्छन्, तथा उनी नै सन्मार्ग देखाउँछन् ।

اُدْعُوْهُمْ لِاٰبَآئِهِمْ هُوَ اَقْسَطُ عِنْدَ اللّٰهِ ۚ فَاِنْ لَّمْ تَعْلَمُوْۤا اٰبَآءَهُمْ فَاِخْوَانُكُمْ فِى الدِّيْنِ وَ مَوَالِيْكُمْ ؕ وَ

६. तिनीहरूलाई तिनीहरूकै पिताहरूको (नाम) अन्तर्गत बोलाउने गर । यही नै अल्लाहको दृष्टिमा अधिक न्यायोचित हुनेछ । परन्तु यदि तिमीहरू तिनीहरूका

لَيْسَ عَلَيْكُمْ جُنَاحٌ فِيمَا أَخْطَأْتُمْ بِهِ وَلَٰكِنْ مَا تَعَمَّدَتْ قُلُوبُكُمْ وَكَانَ اللَّهُ غَفُورًا رَحِيمًا ﴿٥﴾

पिताहरूका सम्बन्धमा केही जान्दैनौ भने तिनीहरू तिमीहरूका धार्मिक भाइहरू र तिमीहरूका मित्रहरू हुन् । तथा तिमीहरूको हृदयले सोचेर गरेको भूल बाहेक कुनै सङ्कल्प बिना नै तिमीहरूले गरेको कुनै भूल त्रुटिप्रति तिमीहरूलाई कुनै दोष लाग्ने छैन, तथा अल्लाह परम क्षमाशील, परम दानशील छन् ।

النَّبِيُّ أَوْلَىٰ بِالْمُؤْمِنِينَ مِنْ أَنْفُسِهِمْ وَأَزْوَاجُهُ أُمَّهَاتُهُمْ وَأُولُو الْأَرْحَامِ بَعْضُهُمْ أَوْلَىٰ بِبَعْضٍ فِي كِتَابِ اللَّهِ مِنَ الْمُؤْمِنِينَ وَالْمُهَاجِرِينَ إِلَّا أَنْ تَفْعَلُوا إِلَىٰ أَوْلِيَائِكُمْ مَعْرُوفًا كَانَ ذَٰلِكَ فِي الْكِتَابِ مَسْطُورًا ﴿٦﴾

७. विश्वासीजनको आफ्नो प्राणभन्दा पनि यी नबी तिनीहरूका अधिक निकट रहेका छन्, तथा यिनकी पत्नीहरू तिनीहरूका निम्ति मातृस्वरुप रहेका छन्, तथा अल्लाहको पुस्तक अनुसार केही रक्त सम्बन्धीहरू अन्यहरू अर्थात्, विश्वासीजनहरू र प्रवासीहरूभन्दा एक अर्काका अधिक निकट रहेका छन् । सिवाय तिमीहरूले स्वेच्छापूर्वक आफ्ना विशेष मित्रहरूसित गर्ने गरेको प्रेमपूर्ण व्यवहार बाहेक । यो कुरो (प्रकृतिको) पुस्तकमा लिपिबद्ध रहेको छ ।

وَإِذْ أَخَذْنَا مِنَ النَّبِيِّينَ مِيثَاقَهُمْ وَمِنْكَ وَمِنْ نُوحٍ وَإِبْرَاهِيمَ وَمُوسَىٰ وَعِيسَى ابْنِ مَرْيَمَ وَأَخَذْنَا مِنْهُمْ مِيثَاقًا غَلِيظًا ﴿٧﴾

८. तथा (स्मरण गर) जब हामीले नबीहरूबाट तिनीहरूको वचन लिएका थियौं, तथा तिमीबाट पनि, र नूहबाट तथा इब्राहिमबाट र मूसाबाट तथा मरियमपुत्र ईसाबाट, तथा तिनीहरूबाट हामीले एउटा दृढ वचन लिएका थियौं,

لِيَسْأَلَ الصَّادِقِينَ عَنْ صِدْقِهِمْ وَأَعَدَّ لِلْكَافِرِينَ عَذَابًا أَلِيمًا ﴿٨﴾

९. ताकि उनले साँचा व्यक्तिहरूसित तिनीहरूको सत्यताका सम्बन्धमा सोधून् । तथा अविश्वासी व्यक्तिहरूका निम्ति उनले पीडादायक दण्ड तयार गरेका छन् ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا اذْكُرُوا نِعْمَةَ اللَّهِ عَلَيْكُمْ إِذْ جَاءَتْكُمْ جُنُودٌ فَأَرْسَلْنَا عَلَيْهِمْ رِيحًا وَجُنُودًا لَمْ تَرَوْهَا وَكَانَ اللَّهُ بِمَا تَعْمَلُونَ بَصِيرًا ﴿٩﴾

१०. हे विश्वासीजन हो ! अल्लाहले तिमीहरूमाथि गरेको त्यस अनुग्रहलाई स्मरण गर । जब तिमीहरूविरुद्ध एउटा लस्करले धावा बोलेको थियो, तथा हामीले तिनीहरूविरुद्ध एउटा यस्तो आँधी र लस्कर

पठाएका थियौं जसलाई तिमीहरूले देख्देनथ्यौ । तथा अल्लाहले तिमीहरूका कार्यहरू देखिरहेछन् ।

إِذْ جَآءُوكُم مِّن فَوْقِكُمْ وَمِنْ أَسْفَلَ مِنكُمْ وَإِذْ زَاغَتِ ٱلْأَبْصَارُ وَبَلَغَتِ ٱلْقُلُوبُ ٱلْحَنَاجِرَ وَتَظُنُّونَ بِٱللَّهِ ٱلظُّنُونَا ﴿١١﴾

११. जब तिनीहरू तिमीहरूमाथि तिमीहरूको माथिल्लो तर्फबाट र तल्लोतर्फबाट आइलागेका थिए । तथा (तिमीहरूका) दृष्टिहरू टेढिन लागेका थिए, तथा (तिमीहरूको) हृदय कण्ठमा धारणाहरू आइपुगेको थियो, तथा अल्लाहका सम्बन्धमा तिमीहरूले मनोमानी धारणाहरू लागेका थियौ ।

هُنَالِكَ ٱبْتُلِيَ ٱلْمُؤْمِنُونَ وَزُلْزِلُوا زِلْزَالًا شَدِيدًا ﴿١٢﴾

१२. त्यहाँ (त्यस समय) विश्वासीहरूको (ठूलो) परीक्षा लिइएको थियो, तथा तिनीहरूलाई नराम्रो गरी कँपाइएको थियो ।

وَإِذْ يَقُولُ ٱلْمُنَافِقُونَ وَٱلَّذِينَ فِي قُلُوبِهِم مَّرَضٌ مَّا وَعَدَنَا ٱللَّهُ وَرَسُولُهُ إِلَّا غُرُورًا ﴿١٣﴾

१३. तथा जब ढोँगी र हृदयमा रोग रहेका व्यक्तिहरूले भनेका थिए, "अल्लाह र उनका सन्देशवाहकले हामीसित केवल धोकापूर्ण अङ्गीकार गरेका थिए ।"

وَإِذْ قَالَت طَّآئِفَةٌ مِّنْهُمْ يَـٰٓأَهْلَ يَثْرِبَ لَا مُقَامَ لَكُمْ فَٱرْجِعُوا وَيَسْتَـْٔذِنُ فَرِيقٌ مِّنْهُمُ ٱلنَّبِيَّ يَقُولُونَ إِنَّ بُيُوتَنَا عَوْرَةٌ وَمَا هِيَ بِعَوْرَةٍ إِن يُرِيدُونَ إِلَّا فِرَارًا ﴿١٤﴾

१४. तथा जब तिनीहरूकै एउटा समूहले भन्यो, "ए यास्रिबका* निवासीहरू हो, (शत्रुविरुद्ध) तिमीहरूको (सम्भवत:) कुनै (पनि) अडान छैन, त्यसकारण तिमीहरू इस्लामबाट विमुख होऊ ।" तथा तिनीहरूकै एउटा जमातले भने (त्यस अवस्थामा पनि) नबीबाट के भन्दै अनुमति माग्दै थियो भने, "हाम्रा घरबार खुल्ला र असुरक्षित छन् ।" (वस्तुत:) ती खुल्ला थिएनन् । तिनीहरू ता केवल भाग्न चाहन्थे ।

وَلَوْ دُخِلَتْ عَلَيْهِم مِّنْ أَقْطَارِهَا ثُمَّ سُئِلُوا ٱلْفِتْنَةَ لَءَاتَوْهَا وَمَا تَلَبَّثُوا بِهَآ إِلَّا يَسِيرًا ﴿١٥﴾

१५. तथा यदि (नगरमा) त्यसका चारैतर्फबाट तिनीहरूविरुद्ध लस्कर दाखिल गरिएको भएमा र तिनीहरूलाई शान्ति भङ्ग गर्ने कार्यमा (सामेल हुन) आह्वान

---

* हिजरतअघि मदिनालाई त्यही नामले जानिन्थ्यो ।

गरिएको भएमा, तिनीहरूले (तत्काल) त्यसै गर्ने थिए, तथा तिनीहरूले त्यहाँ आफ्ना घरमा धेरै समय रहन पाउने थिएनन् ।

وَلَقَدْ كَانُوا عَاهَدُوا اللَّهَ مِنْ قَبْلُ لَا يُوَلُّونَ الْأَدْبَارَ ۚ وَكَانَ عَهْدُ اللَّهِ مَسْئُولًا ﴿١٥﴾

१६. तथा तिनीहरूले साँचै नै त्यसअघि (युद्धमा) आफ्नो पिठ्यूँ देखाउनेछैनौं भनी अल्लाहसित प्रतिज्ञा गरेका थिए । तथा अल्लाहसित गरेको प्रतिज्ञाको निश्चयपूर्वक उत्तर दिनु पर्नेछ ।

قُلْ لَنْ يَنْفَعَكُمُ الْفِرَارُ إِنْ فَرَرْتُمْ مِنَ الْمَوْتِ أَوِ الْقَتْلِ وَإِذًا لَا تُمَتَّعُونَ إِلَّا قَلِيلًا ﴿١٦﴾

१७. तिमी भन, "यदि तिमीहरू मृत्यु अथवा हत्याबाट भागेमा त्यस पलायनले तिमीहरूलाई केही फाइदा दिनेछैन, तथा त्यस अवस्थामा (पनि) तिमीहरूले कुनै सुख भोग्न पाउनेछैनौ ।"

قُلْ مَنْ ذَا الَّذِي يَعْصِمُكُمْ مِنَ اللَّهِ إِنْ أَرَادَ بِكُمْ سُوءًا أَوْ أَرَادَ بِكُمْ رَحْمَةً ۚ وَلَا يَجِدُونَ لَهُمْ مِنْ دُونِ اللَّهِ وَلِيًّا وَلَا نَصِيرًا ﴿١٧﴾

१८. तिमी भन, "यदि उनले तिमीहरूको हानि गर्न चाहेमा अथवा उनले तिमीहरूमाथि अनुग्रह गर्न चाहेमा अल्लाहविरुद्ध तिमीहरूको रक्षा गर्ने को छ?" तथा अल्लाह बाहेक तिनीहरूले आफ्ना निम्ति न कोही मित्र पाउनेछन् न त कोही सहयोगी नै ।

قَدْ يَعْلَمُ اللَّهُ الْمُعَوِّقِينَ مِنْكُمْ وَالْقَائِلِينَ لِإِخْوَانِهِمْ هَلُمَّ إِلَيْنَا ۖ وَلَا يَأْتُونَ الْبَأْسَ إِلَّا قَلِيلًا ﴿١٨﴾

१९. तिमीहरूमध्ये जसले (मानिसहरूलाई) रोक्ने गर्छन् तथा ती व्यक्तिहरू, जसले आफ्ना भाइहरूलाई "तिमीहरू हामीतर्फ आऊ" भनी भन्ने गर्छन् र तिनीहरू कमै संघर्ष गर्नअघि बढ्छन्, अल्लाहले निश्चयपूर्वक तिनीहरूलाई राम्ररी जान्दछन्,

أَشِحَّةً عَلَيْكُمْ ۖ فَإِذَا جَاءَ الْخَوْفُ رَأَيْتَهُمْ يَنْظُرُونَ إِلَيْكَ تَدُورُ أَعْيُنُهُمْ كَالَّذِي يُغْشَىٰ عَلَيْهِ مِنَ الْمَوْتِ ۖ فَإِذَا ذَهَبَ الْخَوْفُ سَلَقُوكُمْ بِأَلْسِنَةٍ

२०. तिमीहरूका सम्बन्धमा तिनीहरू अति कृपण छन् । परन्तु जब डरको अवस्था आइलाग्छ तब तिमीले तिनीहरूलाई कुनै मृत्युको भयले अचेत हुन लागेको व्यक्तिको दृष्टि घुमे झैं दृष्टि घुमाएर तिमीतर्फ हेरेको देख्नेछौ । परन्तु जब डर समाप्त हुन्छ, सम्पत्तिप्रति लालायित हुँदै तिनीहरू तिमीहरूमाथि धारिला शब्दहरू प्रयोग गर्न

أَشِحَّةً عَلَى الْخَيْرِ ۚ أُولَٰئِكَ لَمْ يُؤْمِنُوا فَأَحْبَطَ اللَّهُ أَعْمَالَهُمْ ۚ وَكَانَ ذَٰلِكَ عَلَى اللَّهِ يَسِيرًا ⑲

लाग्छन् । ती व्यक्तिहरूले कदापि विश्वास गरेका थिएनन्, अतः अल्लाहले तिनीहरूका कार्यहरूलाई व्यर्थ र निष्फल तुल्याएका छन् । तथा यो कार्य अल्लाहका निम्ति अति सरल रहेको छ ।

يَحْسَبُونَ الْأَحْزَابَ لَمْ يَذْهَبُوا ۖ وَإِنْ يَأْتِ الْأَحْزَابُ يَوَدُّوا لَوْ أَنَّهُمْ بَادُونَ فِي الْأَعْرَابِ يَسْأَلُونَ عَنْ أَنْبَائِكُمْ ۖ وَلَوْ كَانُوا فِيكُمْ مَا قَاتَلُوا إِلَّا قَلِيلًا ⑳

२१. आक्रमणकारी दलहरू फर्किएर गएका छैनन् भनी तिनीहरू ठान्छन्, तथा यदि ती दलहरूले (पुनः) आक्रमण गरि हालेमा तिनीहरूले तिमीहरूको खबर लिनका निम्ति मरुभूमिका घुमन्ते अरबीहरूसित रहन अधिक रुचाउने थिए । तथा यदि तिनीहरू तिमीहरूसित रहन्थे भने पनि तिनीहरूले पटक्कै संघर्ष गर्ने थिएनन् ।

لَقَدْ كَانَ لَكُمْ فِي رَسُولِ اللَّهِ أُسْوَةٌ حَسَنَةٌ لِمَنْ كَانَ يَرْجُو اللَّهَ وَالْيَوْمَ الْآخِرَ وَذَكَرَ اللَّهَ كَثِيرًا ㉑

२२. वस्तुतः जो व्यक्ति अल्लाहप्रति र अन्तिम दिनप्रति डराउँछ र जसले अल्लाहलाई अत्याधिक स्मरण गर्छ, तिमीहरूमध्ये त्यस्ता व्यक्तिहरूका निम्ति अल्लाहका नबीमा एउटा उत्कृष्ट आदर्श रहेको छ ।

وَلَمَّا رَأَى الْمُؤْمِنُونَ الْأَحْزَابَ قَالُوا هَٰذَا مَا وَعَدَنَا اللَّهُ وَرَسُولُهُ وَصَدَقَ اللَّهُ وَرَسُولُهُ ۚ وَمَا زَادَهُمْ إِلَّا إِيمَانًا وَتَسْلِيمًا ㉒

२३. तथा जब विश्वासीहरूले लस्करहरूलाई देखे, तिनीहरूले भने, "यी ता तिनीहरू नै हुन् जसका बारेमा अल्लाह र उनका सन्देशवाहकले हामीलाई प्रतिश्रुति दिएका थिए, तथा अल्लाह र उनका सन्देशवाहकले नितान्त सत्य कुरा गरेका थिए ।" तथा त्यस घटनाले तिनीहरूको आस्था र आज्ञाकारितामा झन वृद्धि हुन गऱ्यो ।

مِنَ الْمُؤْمِنِينَ رِجَالٌ صَدَقُوا مَا عَاهَدُوا اللَّهَ عَلَيْهِ ۖ فَمِنْهُمْ مَنْ قَضَىٰ نَحْبَهُ وَمِنْهُمْ مَنْ يَنْتَظِرُ ۖ وَمَا بَدَّلُوا تَبْدِيلًا ㉓

२४. विश्वासीहरूमध्ये केही व्यक्तिहरू यस्ता छन् जसले अल्लाहसित गरेको अङ्गीकारलाई (बाचालाई) सत्य प्रमाणित गरिसकेका छन् । तिनीहरूमध्ये केहीले भने आफ्नो व्रत - वचन) पूर्ण गरिसकेका छन्, तथा (केही) व्यक्तिहरू भने (अझ) प्रतीक्षारत छन्, तथा तिनीहरूले

(आफ्नो अभिप्राय) रतीभर परिवर्तन गरेका छैनन् ।

لِّيَجْزِيَ اللّٰهُ الصّٰدِقِيْنَ بِصِدْقِهِمْ وَ يُعَذِّبَ الْمُنٰفِقِيْنَ اِنْ شَآءَ اَوْ يَتُوْبَ عَلَيْهِمْ ؕ اِنَّ اللّٰهَ كَانَ غَفُوْرًا رَّحِيْمًا ﴿۲۴﴾

२५. ताकि अल्लाहले सत्यवादीहरूलाई तिनीहरूको सत्यवादिताका कारण प्रतिदान प्रदान गरुन्, तथा उनले चाहेमा ढोंगी व्यक्तिहरूलाई दण्ड दिउन्, अथवा तिनीहरूतर्फ कृपादृष्टि गरुन् । वस्तुतः अल्लाह परम क्षमाशील, परम दानशील छन्

وَ رَدَّ اللّٰهُ الَّذِيْنَ كَفَرُوْا بِغَيْظِهِمْ لَمْ يَنَالُوْا خَيْرًا ؕ وَ كَفَى اللّٰهُ الْمُؤْمِنِيْنَ الْقِتَالَ ؕ وَ كَانَ اللّٰهُ قَوِيًّا عَزِيْزًا ﴿۲۵﴾

२६. तथा अल्लाहले अविश्वासीहरूलाई तिनीहरूको क्रोधसहित फर्काए, तिनीहरूले केही लाभ प्राप्त गर्न सकेनन् । तथा अल्लाह विश्वासीहरूको पक्षमा तिनीहरूको लडाइँमा पर्याप्त रहे । तथा अल्लाह परम शक्ति सम्पन्न, परम पराक्रमी छन् ।

وَ اَنْزَلَ الَّذِيْنَ ظَاهَرُوْهُمْ مِّنْ اَهْلِ الْكِتٰبِ مِنْ صَيَاصِيْهِمْ وَ قَذَفَ فِيْ قُلُوْبِهِمُ الرُّعْبَ فَرِيْقًا تَقْتُلُوْنَ وَ تَاْسِرُوْنَ فَرِيْقًا ﴿۲۶﴾

२७. तथा उनले ती पुस्तकप्राप्त व्यक्तिहरूलाई जसले तिनीहरूलाई सहयोग पुऱ्याएका थिए आफ्ना किल्लाहरूबाट बाहिर निकाले तथा तिनीहरूका हृदयमा त्रास दाखिल गरे । तिनीहरूमध्ये केहीलाई तिमीहरूले हत्या गऱ्यौ, तथा केहीलाई भने तिमीहरूले बन्दी बनायौ ।

وَ اَوْرَثَكُمْ اَرْضَهُمْ وَ دِيَارَهُمْ وَ اَمْوَالَهُمْ وَ اَرْضًا لَّمْ تَطَـُٔوْهَا ؕ وَ كَانَ اللّٰهُ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرًا ﴿۲۷﴾

२८. तथा उनले तिमीहरूलाई तिनीहरूको जमीन र तिनीहरूका घरबार तथा तिनीहरूको धन-सम्पत्ति, तथा यस्तो जमीनका उत्तराधिकारी बनाए जसमाथि तिमीहरूले कदापि कदम राखेका थिएनौ । तथा सम्पूर्ण कुराहरूमाथि अल्लाह पूर्ण सामर्थ्यवान् रहेका छन् ।

يٰۤاَيُّهَا النَّبِيُّ قُلْ لِّاَزْوَاجِكَ اِنْ كُنْتُنَّ تُرِدْنَ الْحَيٰوةَ الدُّنْيَا وَ زِيْنَتَهَا فَتَعَالَيْنَ اُمَتِّعْكُنَّ وَ اُسَرِّحْكُنَّ سَرَاحًا جَمِيْلًا ﴿۲۸﴾

२९. हे नबी ! तिमी आफ्ना पत्नीहरूलाई भन, "तिमीहरू यदि यस संसारको जीवन र यसकै सौन्दर्यमात्र चाहन्छौ भने, आऊ, म तिमीहरूलाई सांसरिक साधन प्रदान गरी उत्तम तरिकाले बिदा गर्नेछु ।"

३०. "परन्तु यदि तिमीहरू अल्लाह र उनका सन्देशवाहक तथा परलोकको घर चाहन्छौ भने, अल्लाहले तिमीहरूमध्ये पुण्य कार्य गर्नेहरूका निम्ति साँचै नै ठूलो प्रतिदान तयार राखेका छन् ।"

وَإِنْ كُنْتُنَّ تُرِدْنَ اللّٰهَ وَرَسُوْلَهٗ وَالدَّارَ الْاٰخِرَةَ فَإِنَّ اللّٰهَ أَعَدَّ لِلْمُحْسِنٰتِ مِنْكُنَّ أَجْرًا عَظِيْمًا ﴿٣٠﴾

३१. हे नबीका पत्नीहरू हो ! यदि तिमीहरूमध्ये कसैले मर्यादा विपरित खुल्लारूपमा अपराध गरेमा, त्यसलाई दोब्बर दण्ड मिल्नेछ । तथा यो कार्य अल्लाहका निम्ति अति सहज रहेको छ ।

يٰنِسَآءَ النَّبِيِّ مَنْ يَّأْتِ مِنْكُنَّ بِفَاحِشَةٍ مُّبَيِّنَةٍ يُّضٰعَفْ لَهَا الْعَذَابُ ضِعْفَيْنِ ۚ وَكَانَ ذٰلِكَ عَلَى اللّٰهِ يَسِيْرًا ﴿٣١﴾

३२. परन्तु तिमीहरूमध्ये जसले अल्लाह र उनका सन्देशवाहकको आज्ञापालन गर्नेछन् र पुण्यकार्य गर्नेछन्, हामी तिनलाई तिनको दुईगुना प्रतिदान प्रदान गर्नेछौं, तथा तिनका निम्ति हामीले एउटा सम्मानजनक जीविका तयार पारेका छौं ।

وَمَنْ يَّقْنُتْ مِنْكُنَّ لِلّٰهِ وَرَسُوْلِهٖ وَتَعْمَلْ صَالِحًا نُّؤْتِهَآ أَجْرَهَا مَرَّتَيْنِ ۙ وَأَعْتَدْنَا لَهَا رِزْقًا كَرِيْمًا ﴿٣٢﴾

३३. "हे नबीका पत्नीहरू हो" यदि तिमीहरू धर्मनिष्ठा हौ भने तिमीहरू (अन्य) महिलाहरूसरह होइनौ, त्यसकारण हलुका कुरा गर्ने नगर, जसको फलस्वरूप कुनै हृदयमा रोग रहेको व्यक्तिले नराम्रो भावना नराखोस्, तथा सदा मर्यादापूर्ण वार्ता गर्ने गर ।

يٰنِسَآءَ النَّبِيِّ لَسْتُنَّ كَأَحَدٍ مِّنَ النِّسَآءِ إِنِ اتَّقَيْتُنَّ فَلَا تَخْضَعْنَ بِالْقَوْلِ فَيَطْمَعَ الَّذِيْ فِيْ قَلْبِهٖ مَرَضٌ وَّقُلْنَ قَوْلًا مَّعْرُوْفًا ﴿٣٣﴾

३४. तथा (मर्यादाको पालना गरी) आफ्नो घरमा रहने गर, तथा अज्ञानका दिनहरूमा श्रृङ्गार प्रदर्शन गरेझैं आफ्नो श्रृङ्गार प्रदर्शन नगर, तथा नमाज अनुष्ठान गर तथा जगात तिर्ने गर र अल्लाह तथा उनका सन्देशवाहकका आज्ञाकारी बन । हे (नबीका) गृहनिवासी हो ! अल्लाहले निश्चयपूर्वक तिमीहरूबाट तिमीहरूको (सम्पूर्ण) अपवित्रता निवारण गरी तिमीहरूलाई पूर्णतया पवित्र तुल्याउन चाहन्छन् ।

وَقَرْنَ فِيْ بُيُوْتِكُنَّ وَلَا تَبَرَّجْنَ تَبَرُّجَ الْجَاهِلِيَّةِ الْأُوْلٰى وَأَقِمْنَ الصَّلٰوةَ وَاٰتِيْنَ الزَّكٰوةَ وَأَطِعْنَ اللّٰهَ وَرَسُوْلَهٗ ۚ إِنَّمَا يُرِيْدُ اللّٰهُ لِيُذْهِبَ عَنْكُمُ الرِّجْسَ أَهْلَ الْبَيْتِ وَيُطَهِّرَكُمْ تَطْهِيْرًا ﴿٣٤﴾

وَاذْكُرْنَ مَا يُتْلَىٰ فِي بُيُوتِكُنَّ مِنْ آيَاتِ
اللَّهِ وَالْحِكْمَةِ ۚ إِنَّ اللَّهَ كَانَ لَطِيفًا
خَبِيرًا ﴿٣٤﴾

३५. तथा तिमीहरूका घरमा पाठ गरिने गरेका अल्लाहका चिह्नहरू र ज्ञान(का कुराहरू)लाई याद राख । वस्तुतः अल्लाह सूक्ष्मदर्शी, सर्वविदित छन् ।

إِنَّ الْمُسْلِمِينَ وَالْمُسْلِمَاتِ وَ
الْمُؤْمِنِينَ وَالْمُؤْمِنَاتِ وَالْقَانِتِينَ وَ
الْقَانِتَاتِ وَالصَّادِقِينَ وَالصَّادِقَاتِ وَ
الصَّابِرِينَ وَالصَّابِرَاتِ وَالْخَاشِعِينَ وَ
الْخَاشِعَاتِ وَالْمُتَصَدِّقِينَ وَالْمُتَصَدِّقَاتِ
وَالصَّائِمِينَ وَالصَّائِمَاتِ وَالْحَافِظِينَ
فُرُوجَهُمْ وَالْحَافِظَاتِ وَالذَّاكِرِينَ
اللَّهَ كَثِيرًا وَالذَّاكِرَاتِ أَعَدَّ اللَّهُ
لَهُمْ مَغْفِرَةً وَأَجْرًا عَظِيمًا ﴿٣٥﴾

३६. निश्चयपूर्वक, (अल्लाहप्रति) पूर्ण समर्पित पुरुषहरू र (उनीप्रति) पूर्ण समर्पित महिलाहरू, तथा विश्वासी पुरुषहरू र विश्वासी महिलाहरू, तथा आज्ञाकारी पुरुषहरू र आज्ञाकारी महिलाहरू तथा सत्यवादी पुरुषहरू र सत्यवादी महिलाहरू, तथा (आफ्नो आस्थाप्रति) धैर्यधारण गर्ने पुरुषहरू र धैर्यधारी महिलाहरू, तथा विनयशील पुरुषहरू र विनयशील महिलाहरू तथा दान-दक्षिणा दिने पुरुषहरू र दानदक्षिणा दिने महिलाहरू, तथा बर्तालु पुरुषहरू र वर्तालु महिलाहरू, तथा आफ्नो पवित्रताको (गुप्ताङ्गको) संरक्षण गर्ने पुरुषहरू र आफ्नो पवित्रताको (गुप्ताङ्गको) संरक्षण गर्ने महिलाहरू, तथा अल्लाहलाई अत्याधिक स्मरण गर्ने पुरुषहरू र (उनलाई) स्मरण गर्ने महिलाहरू– यिनीहरू (सबै) का निम्ति अल्लाहले क्षमा र महान प्रतिदान तयार पारेर राखेका छन् ।

وَمَا كَانَ لِمُؤْمِنٍ وَلَا مُؤْمِنَةٍ إِذَا قَضَى
اللَّهُ وَرَسُولُهُ أَمْرًا أَنْ يَكُونَ لَهُمُ
الْخِيَرَةُ مِنْ أَمْرِهِمْ ۗ وَمَنْ يَعْصِ اللَّهَ وَ
رَسُولَهُ فَقَدْ ضَلَّ ضَلَالًا مُبِينًا ﴿٣٦﴾

३७. जब अल्लाह र उनका सन्देशवाहकले कुनै कुराको निर्णय गरिसकेपछि कुनै विश्वासी पुरुष अथवा विश्वासी महिलाका निम्ति आफू सम्बन्धी कुनै कुराको स्वेच्छापूर्वक निर्णय गर्नु कदापि उचित हुनेछैन । तथा जसले अल्लाह र उनका सन्देशवाहकको अवज्ञा गर्छ त्यो व्यक्ति निश्चयपूर्वक खुल्लम-खुल्ला पथभ्रष्ट हुन पुग्छ

وَإِذْ تَقُولُ لِلَّذِي أَنْعَمَ اللَّهُ عَلَيْهِ وَ
أَنْعَمْتَ عَلَيْهِ أَمْسِكْ عَلَيْكَ زَوْجَكَ

३८. तथा (स्मरण गर) जब तिमीले त्यस व्यक्तिलाई, जसमाथि अल्लाहले र तिमीले (समेत) अनुग्रह गरेका थियौ, भनेका थियौ,

وَاتَّقِ اللّٰهَ وَتُخْفِيْ فِيْ نَفْسِكَ مَا اللّٰهُ مُبْدِيْهِ وَتَخْشَى النَّاسَ ۚ وَاللّٰهُ اَحَقُّ اَنْ تَخْشٰىهُ ۗ فَلَمَّا قَضٰى زَيْدٌ مِّنْهَا وَطَرًا زَوَّجْنٰكَهَا لِكَيْ لَا يَكُوْنَ عَلَى الْمُؤْمِنِيْنَ حَرَجٌ فِيْٓ اَزْوَاجِ اَدْعِيَاۤىِٕهِمْ اِذَا قَضَوْا مِنْهُنَّ وَطَرًا ۗ وَكَانَ اَمْرُ اللّٰهِ مَفْعُوْلًا ﴿٣٧﴾

"तिमी आफ्नी पत्नीलाई आफूसितै रोकेर राख, तथा अल्लाहको डर मनमा धारण गर ।" तथा तिमीले आफ्नो हृदयमा त्यो कुरा लुकाएका थियौ जुन कुरालाई अल्लाहले प्रकाशमा ल्याउन लागेका थिए, तथा तिमी मानिसहरूसित डराउँथ्यौ, अपितु अल्लाह नै त्यस कुराका अधिक हकदार रहेका छन् जसको डर तिमीले राख । अत: जब जैदले तिनका सम्बन्धमा आफ्नो चित्त बुझाए (अर्थात् भविष्यमा उनको आवश्यकता नरहेको अनुभव गरे), हामीले तिमीसित तिनको विवाह सम्पन्न गरिदियौं, ताकि विश्वासीजनलाई तिनीहरूका धर्मपुत्रहरूका पत्नीहरूसित विवाह गर्ने सम्बन्धमा तिनीहरूबाट उनीहरूको चित्त बुझेपश्चात् कुनै रोक उत्पन्न नहोस् । तथा अल्लाहको निर्णय पूरा भएरै छाड्छ ।

مَا كَانَ عَلَى النَّبِيِّ مِنْ حَرَجٍ فِيْمَا فَرَضَ اللّٰهُ لَهٗ ۗ سُنَّةَ اللّٰهِ فِى الَّذِيْنَ خَلَوْا مِنْ قَبْلُ ۗ وَكَانَ اَمْرُ اللّٰهِ قَدَرًا مَّقْدُوْرَا ۙ ﴿٣٨﴾

३९. नबीलाई त्यस कुराले केही बाधा तुल्याउने छैन जुन कुराको पालना उनीमाथि अल्लाहले अनिवार्य गरेका छन् । पहिला बितिसकेका मानिसहरूमा अल्लाहको यही दस्तुर प्रचलित थियो– तथा अल्लाहको आदेश ता निर्णीत कुरो रहेको छ–

الَّذِيْنَ يُبَلِّغُوْنَ رِسٰلٰتِ اللّٰهِ وَيَخْشَوْنَهٗ وَلَا يَخْشَوْنَ اَحَدًا اِلَّا اللّٰهَ ۗ وَكَفٰى بِاللّٰهِ حَسِيْبًا ﴿٣٩﴾

४०. ती व्यक्तिहरूमा, जसले अल्लाहको सन्देश वहन गर्ने गर्थे र उनीसित डराउँथे, तथा अल्लाहबाहेक अन्य कसैसित डराउँदैनथे । तथा हिसाब लिनका निम्ति अल्लाह नै पर्याप्त रहेका छन् ।

مَا كَانَ مُحَمَّدٌ اَبَآ اَحَدٍ مِّنْ رِّجَالِكُمْ وَلٰكِنْ رَّسُوْلَ اللّٰهِ وَخَاتَمَ النَّبِيّٖنَ ۗ وَكَانَ اللّٰهُ بِكُلِّ شَيْءٍ عَلِيْمًا ﴿٤٠﴾

४१. मुहम्मद तिमीहरूमध्ये कुनै पुरुषका पिता होइनन्, परन्तु (उनी) अल्लाहका सन्देशवाहक र नबीहरूका मोहर हुन् । तथा सम्पूर्ण कुराहरूप्रति अल्लाह पूर्ण अवगत रहेका छन् ।

يَاَيُّهَا الَّذِيْنَ اٰمَنُوا اذْكُرُوا اللّٰهَ ذِكْرًا كَثِيْرًا ﴿٤١﴾

४२. हे विश्वासीजन हो ! अल्लाहलाई अत्याधिक स्मरण गर्ने गर,

وَّ سَبِّحُوْهُ بُكْرَةً وَّ اَصِيْلًا ﴿٤٢﴾

४३. तथा बिहानी र बेलुकी उनको गणगान गर्ने गर ।

هُوَ الَّذِيْ يُصَلِّيْ عَلَيْكُمْ وَ مَلٰٓئِكَتُهٗ لِيُخْرِجَكُمْ مِّنَ الظُّلُمٰتِ اِلَى النُّوْرِ ؕ وَكَانَ بِالْمُؤْمِنِيْنَ رَحِيْمًا ﴿٤٣﴾

४४. ती उनी नै हुन्, जसले तिमीहरूमाथि आशीर्वाद वर्षण गर्छन्, यसैगरी उनका फरिस्ताहरूले (पनि), ताकि उनले तिमीहरूलाई सबै (प्रकारका) अन्धकारहरू - बाट निकाली प्रकाशतर्फ लैजाउन् । तथा उनी विश्वासीहरूमाथि परम करुणाशील रहेका छन् ।

تَحِيَّتُهُمْ يَوْمَ يَلْقَوْنَهٗ سَلٰمٌ ۚۖ وَ اَعَدَّ لَهُمْ اَجْرًا كَرِيْمًا ﴿٤٤﴾

४५. जुन दिन तिनीहरूको उनीसत भेट हुनेछ त्यसदिन तिनीहरूको उपहार 'शान्ति' हुनेछ । तथा उनले तिनीहरूका निम्ति एउटा सम्मानजनक प्रतिदान तयार राखेका छन् ।

يٰٓاَيُّهَا النَّبِيُّ اِنَّآ اَرْسَلْنٰكَ شَاهِدًا وَّ مُبَشِّرًا وَّ نَذِيْرًا ﴿٤٥﴾

४६. हे नबी (सिद्ध पुरुष), हामीले तिमीलाई साँचै नै साक्षीस्वरूप, र शुभ सन्देशवाहकस्वरूप तथा एकजना सतर्ककारीस्वरूप पठाएका छौं,

وَّ دَاعِيًا اِلَى اللّٰهِ بِاِذْنِهٖ وَ سِرَاجًا مُّنِيْرًا ﴿٤٦﴾

४७. तथा अल्लाहतर्फ उनको आदेशअन्तर्गत आह्वानकारीस्वरूप तथा प्रकाशमय सूर्यस्वरूप - बनाएका छौं) ।

وَبَشِّرِ الْمُؤْمِنِيْنَ بِاَنَّ لَهُمْ مِّنَ اللّٰهِ فَضْلًا كَبِيْرًا ﴿٤٧﴾

४८. तथा विश्वासीजनलाई तिनीहरूका निम्ति अल्लाहका तर्फबाट ठूलो पुरस्कार रहेको छ भनी शुभसन्देश देउ ।

وَلَا تُطِعِ الْكٰفِرِيْنَ وَ الْمُنٰفِقِيْنَ وَ دَعْ اَذٰىهُمْ وَ تَوَكَّلْ عَلَى اللّٰهِ ؕ وَكَفٰى بِاللّٰهِ وَكِيْلًا ﴿٤٨﴾

४९. तथा अविश्वासीहरू र ढोंगीहरूको अनुसरण नगर, तथा तिनीहरूबाट हुने क्लेशतर्फ ध्यान नदेउ र अल्लाहमाथि आफ्नो भरोसा राख, कारण संरक्षकस्वरूप अल्लाह नै पर्याप्त रहेका छन् ।

يَاَيُّهَا الَّذِيْنَ اٰمَنُوْٓا اِذَا نَكَحْتُمُ الْمُؤْمِنٰتِ ثُمَّ طَلَّقْتُمُوْهُنَّ مِنْ قَبْلِ اَنْ تَمَسُّوْهُنَّ فَمَا لَكُمْ عَلَيْهِنَّ مِنْ عِدَّةٍ تَعْتَدُّوْنَهَا ۚ فَمَتِّعُوْهُنَّ وَ سَرِّحُوْهُنَّ سَرَاحًا جَمِيْلًا ۝

५०. हे विश्वासीजन हो ! जब तिमीहरू विश्वासी महिलाहरूसित विवाह गर्छौ र तिनीहरूलाई स्पर्श गर्नुअघि नै तिमीहरूले तिनीहरूलाई पारपाचुके दिन्छौ भने तिमीहरूका निम्ति (निर्धारित) म्यादम्म तिनीहरूले प्रतिक्षा गर्ने सम्बन्धमा म्यादको गणना गर्नु कुनै आवश्यक रहनेछैन । त्यसकारण तिनीहरूलाई केही जीविकाको साधन दिएर उचितरूपमा तिनीहरूलाई बिदा देऊ ।

يَاَيُّهَا النَّبِيُّ اِنَّآ اَحْلَلْنَا لَكَ اَزْوَاجَكَ الّٰتِيْٓ اٰتَيْتَ اُجُوْرَهُنَّ وَ مَا مَلَكَتْ يَمِيْنُكَ مِمَّآ اَفَآءَ اللّٰهُ عَلَيْكَ وَ بَنٰتِ عَمِّكَ وَ بَنٰتِ عَمّٰتِكَ وَ بَنٰتِ خَالِكَ وَ بَنٰتِ خٰلٰتِكَ الّٰتِيْ هَاجَرْنَ مَعَكَ ز وَ امْرَاَةً مُّؤْمِنَةً اِنْ وَّهَبَتْ نَفْسَهَا لِلنَّبِيِّ اِنْ اَرَادَ النَّبِيُّ اَنْ يَّسْتَنْكِحَهَا ق خَالِصَةً لَّكَ مِنْ دُوْنِ الْمُؤْمِنِيْنَ ؕ قَدْ عَلِمْنَا مَا فَرَضْنَا عَلَيْهِمْ فِيْٓ اَزْوَاجِهِمْ وَ مَا مَلَكَتْ اَيْمَانُهُمْ لِكَيْلَا يَكُوْنَ عَلَيْكَ حَرَجٌ ؕ وَ كَانَ اللّٰهُ غَفُوْرًا رَّحِيْمًا ۝

५१. हे नबी, तिम्रा पत्नीहरूमध्ये जसलाई तिमीले तिनीहरूको दाइजो (मेहर) प्रदान गरेका छौं, तथा युद्धलाभस्वरूप अल्लाहले तिमीलाई प्रदान गरेका महिलाहरूमध्ये ती - महिलाहरू) जुन तिम्रा दाहिने हात अन्तर्गत रहेका छन्, तिम्रा निम्ति वैध ठहऱ्याइएका छन् । तथा तिम्रा काकाका छोरीहरू, र तिम्रा फुपूकी छोरीहरू, र तिम्रा मामाकी छोरीहरू; र तिम्रा सानीमाकी ती छोरीहरू जसले तिमीसित आप्रवास अवलम्बन गरेका छन् तथा,यस्तो (कुनै) विश्वासी महिला जसले स्वयम्लाई नबीसित विवाह गर्नका निम्ति प्रस्ताव राखेमा यदि नबीले तिनीसित विवाह गर्न चाहेमा (वैध ठहऱ्याइएका छन्), त्यो केवल तिम्रा निम्ति रहेको छ । अन्य विश्वासीजनका निम्ति त्यो अनुमति रहेको छैन- तिनीहरूमाथि तिनीहरूका पत्नीहरू तथा तिनीहरूका दासीहरूका सम्बन्धमा जुनकुरा हामीले अनिवार्य गरेका छौं त्यसलाई हामी राम्ररी जान्दछौ- ताकि त्यसद्वारा तिमीलाई आफ्नो कार्य सम्पादनमा कुनै प्रकारको कठिनाइ नपरोस । तथा अल्लाह परम क्षमाशील, परम दानशील छन् ।

تُرْجِيْ مَنْ تَشَآءُ مِنْهُنَّ وَ تُـْٔوِيْٓ اِلَيْكَ مَنْ تَشَآءُ ؕ وَ مَنِ ابْتَغَيْتَ مِمَّنْ عَزَلْتَ

५२. (यदि तिमीले चाहेमा) तिनीहरूमध्ये कसैको पनि (विवाह) टार्न सक्छौ, र

فَلَا جُنَاحَ عَلَيْكَ ۚ ذٰلِكَ اَدْنٰٓى اَنْ تَقَرَّ اَعْيُنُهُنَّ وَلَا يَحْزَنَّ وَيَرْضَيْنَ بِمَآ اٰتَيْتَهُنَّ كُلُّهُنَّ ۚ وَاللّٰهُ يَعْلَمُ مَا فِيْ قُلُوْبِكُمْ ۚ وَكَانَ اللّٰهُ عَلِيْمًا حَلِيْمًا ﴿٥١﴾

जसलाई चाहन्छौ आफूसित राख्न सक्छौ तथा तिमीले अलग गरेका महिलाहरूमध्ये कसैलाई तिमीले(फर्काउन) चाहेमा तिमीमाथि कुनै दोष लाग्नेछैन । त्यसको परिणामस्वरुप तिनीहरूका नेत्रहरूलाई शीतलता प्राप्त हुने अधिक सम्भावना रहेको छ, ताकि तिनीहरू चिन्ताग्रस्त नहुन् तथा जुनकुरा तिमीले तिनीहरूलाई प्रदान गरेका छौ त्यसप्रति तिनीहरू सबै प्रशन्न रहुन् । तथा जुन कुरा तिमीहरूका हृदयमा रहेको छ त्यसलाई अल्लाहले जान्दछन्; तथा अल्लाह सर्वज्ञ, परम सहनशील छन् ।

لَا يَحِلُّ لَكَ النِّسَآءُ مِنْۢ بَعْدُ وَلَآ اَنْ تَبَدَّلَ بِهِنَّ مِنْ اَزْوَاجٍ وَّلَوْ اَعْجَبَكَ حُسْنُهُنَّ اِلَّا مَا مَلَكَتْ يَمِيْنُكَ ۚ وَكَانَ اللّٰهُ عَلٰى كُلِّ شَيْءٍ رَّقِيْبًا ﴿٥٢﴾

५३. त्यसपछि अन्य कुनै महिलासित ( विवाह गर्ने) तिमीलाई अनुमति छैन, न त तिनीहरूलाई अन्य पत्नीहरूका सट्टामा परिवर्तन गर्ने अनुमति नै छ चाहे तिमीलाई तिनीहरूको सौन्दर्य कति नै मन किन नपरोस् सिवाय ती महिलाहरू जसको मालिक तिम्रो दाहिने हात रहेको छ । तथा अल्लाह सम्पूर्ण वस्तुहरूका निरीक्षक रहेका छन् ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا لَا تَدْخُلُوْا بُيُوْتَ النَّبِيِّ اِلَّآ اَنْ يُّؤْذَنَ لَكُمْ اِلٰى طَعَامٍ غَيْرَ نٰظِرِيْنَ اِنٰىهُ ۙ وَلٰكِنْ اِذَا دُعِيْتُمْ فَادْخُلُوْا فَاِذَا طَعِمْتُمْ فَانْتَشِرُوْا وَلَا مُسْتَاْنِسِيْنَ لِحَدِيْثٍ ۚ اِنَّ ذٰلِكُمْ كَانَ يُؤْذِى النَّبِيَّ فَيَسْتَحْيٖ مِنْكُمْ ۫ وَاللّٰهُ لَا يَسْتَحْيٖ مِنَ الْحَقِّ ۚ وَاِذَا سَاَلْتُمُوْهُنَّ مَتَاعًا فَسْـَٔلُوْهُنَّ مِنْ وَّرَآءِ حِجَابٍ ۚ ذٰلِكُمْ اَطْهَرُ لِقُلُوْبِكُمْ وَقُلُوْبِهِنَّ ۚ وَمَا كَانَ لَكُمْ اَنْ تُؤْذُوْا

५४. हे विश्वासीजन हो ! भोजनका निम्ति तिमीहरूलाई निमन्त्रणा नदिउञ्जेलसम्म नबीका घरमा प्रवेश नगर, तथा त्यसोपरान्त भोजन पाक्नुभन्दा (धेरै अगाडि) पनि (प्रवेश) नगर । परन्तु जब तिमीहरूलाई निमन्त्रणा गरिन्छ तब प्रवेश गर, तथा जब तिमीहरू भोजन गरिसक्छौ तब वार्तालाप गर्ने इच्छा नगरी प्रस्थान गर्ने गर । त्यस कुराले नबीलाई दुखित तुल्याउँछ, तथा तिमीहरूलाई (जाऊ भन्न) उनी सङ्कोच मान्छन् । परन्तु सत्य कुरा गर्न अल्लाह सङ्कोच मान्दैनन् । तथा जब तिमीहरू तिनीहरूबाट (नबीका पत्नीहरूबाट) केही वस्तु माग्छौं तब पर्दाका पछाडिबाट तिनीहरूसित माग्ने गर । त्यो कार्य

رَسُوْلَ اللّٰهِ وَلَآ اَنْ تَنْكِحُوْٓا اَزْوَاجَهٗ مِنْۢ بَعْدِهٖٓ اَبَدًا ۭ اِنَّ ذٰلِكُمْ كَانَ عِنْدَ اللّٰهِ عَظِيْمًا ﴿٥٣﴾

तिमीहरूको हृदय र तिनीहरूको हृदयका निम्ति अधिक पवित्र हुनेछ । तथा अल्लाहका सन्देशवाहकलाई दुखित तुल्याउनु तिमीहरूका निम्ति उचित हुँदैन, न त उनका शेषपछि उनका पत्नीहरूसित कहिल्यै तिमीहरूले विवाह गर्नु उचित हुन्छ । यो कुरा अल्लाहको दृष्टिमा अति नराम्रो रहेको छ ।

اِنْ تُبْدُوْا شَيْـًٔا اَوْ تُخْفُوْهُ فَاِنَّ اللّٰهَ كَانَ بِكُلِّ شَيْءٍ عَلِيْمًا ﴿٥٤﴾

५५. चाहे कुनै कुरालाई तिमीहरू प्रकट गर अथवा त्यसलाई गुप्त राख, अल्लाहले सम्पूर्ण कुराहरूलाई अति नै राम्ररी जान्दछन्

لَا جُنَاحَ عَلَيْهِنَّ فِيْٓ اٰبَاۗىِٕهِنَّ وَلَآ اَبْنَاۗىِٕهِنَّ وَلَآ اِخْوَانِهِنَّ وَلَآ اَبْنَاۗءِ اِخْوَانِهِنَّ وَلَآ اَبْنَاۗءِ اَخَوٰتِهِنَّ وَلَا نِسَاۗىِٕهِنَّ وَلَا مَا مَلَكَتْ اَيْمَانُهُنَّ ۚ وَاتَّقِيْنَ اللّٰهَ ۭ اِنَّ اللّٰهَ كَانَ عَلٰي كُلِّ شَيْءٍ شَهِيْدًا ﴿٥٥﴾

५६. (यस सम्बन्धमा) तिनीहरूका पिताहरू अथवा तिनीहरूका आफ्ना पुत्रहरू अथवा आफ्ना भाइहरू अथवा आफ्ना भाइहरूका पुत्रहरू अथवा आफ्ना बहिनीहरूका पुत्रहरू अथवा आफ्ना दौंतरी महिलाहरू अथवा तिनीहरूका दास-दासीहरूका सामुन्ने (तिनीहरू आएमा) तिनीहरूलाई दोष लाग्नेछैन । तथा हे नबीका पत्नीहरू हो, अल्लाहसित डराऊ, वस्तुतः सम्पूर्ण वस्तुहरूमाथि अल्लाहको दृष्टि रहेको छ ।

اِنَّ اللّٰهَ وَمَلٰۗىِٕكَتَهٗ يُصَلُّوْنَ عَلَي النَّبِيِّ ۭ يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا صَلُّوْا عَلَيْهِ وَسَلِّمُوْا تَسْلِيْمًا ﴿٥٦﴾

५७. अल्लाह तथा उनका देवदूतहरू यी नबीमाथि करुणा प्रेषण गरिरहेछन् । हे विश्वासीजन हो! - तिमीहरू पनि) उनीमाथि दरूद (करुणावर्षणको प्रार्थना) गर्ने गर तथा (उनप्रति) सलाम, (शान्तिवषर्ण होस् भन्ने आन्तरिक) कामना गर्ने गर ।

اِنَّ الَّذِيْنَ يُؤْذُوْنَ اللّٰهَ وَرَسُوْلَهٗ لَعَنَهُمُ اللّٰهُ فِي الدُّنْيَا وَالْاٰخِرَةِ وَاَعَدَّ لَهُمْ عَذَابًا مُّهِيْنًا ﴿٥٧﴾

५८. वस्तुत ! जसले अल्लाह र उनका सन्देशवाहकलाई दुखित तुल्याउँछन्- अल्लाहले तिनीहरूलाई यस संसारमा र परलोकमा अभिशापित तुल्याएका छन्, तथा तिनीहरूका निम्ति एउटा अपमानजनक

दण्ड तयार पारेका छन् ।

५९. तथा जसले विश्वासी पुरुष तथा विश्वासी महिलाहरूलाई तिनीहरूको केही कसूरबिना नै दुःख दिन्छन् तिनीहरूले ठूलो (मिथ्या) दोषारोपण र खुल्लम खुल्ला पापको बोझ उठाउनेछन् ।

وَالَّذِينَ يُؤْذُونَ الْمُؤْمِنِينَ وَالْمُؤْمِنَاتِ بِغَيْرِ مَا اكْتَسَبُوا فَقَدِ احْتَمَلُوا بُهْتَانًا وَإِثْمًا مُبِينًا ﴿٥٩﴾

६०. हे नबी ! तिमी आफ्ना पत्नीहरू र आफ्नी छोरीहरू तथा विश्वासीजनका महिलाहरूलाई तिनीहरूले (टाउकोदेखि लिएर मुहारसम्म ठूलो) बाहिरी ओढ्ने तानेर स्वयम्लाई ढाकून् भनी देउ । (त्यसप्रकार) सम्भवतः तिनीहरू चिनिने छन् र सताइने छैनन् । तथा अल्लाह परम क्षमाशील, परम दानशील छन् ।

يَا أَيُّهَا النَّبِيُّ قُلْ لِأَزْوَاجِكَ وَبَنَاتِكَ وَنِسَاءِ الْمُؤْمِنِينَ يُدْنِينَ عَلَيْهِنَّ مِنْ جَلَابِيبِهِنَّ ۚ ذَٰلِكَ أَدْنَىٰ أَنْ يُعْرَفْنَ فَلَا يُؤْذَيْنَ ۗ وَكَانَ اللَّهُ غَفُورًا رَحِيمًا ﴿٦٠﴾

६१. यदि ती ढोंगीहरू, र हृदयमा रोग रहेका व्यक्तिहरू तथा नगरमा मिथ्या अपवादको प्रचार गर्ने व्यक्तिहरू पछि हटेनन् भने, हामी तिमीलाई तिनीहरूविरुद्ध खडा गर्नेछौं; त्यसपछि तिनीहरू त्यस नगरमा केही समयसम्म मात्र तिमीहरूका छेउछाउ बसोबास गर्नेछन् ।

لَئِنْ لَمْ يَنْتَهِ الْمُنَافِقُونَ وَالَّذِينَ فِي قُلُوبِهِمْ مَرَضٌ وَالْمُرْجِفُونَ فِي الْمَدِينَةِ لَنُغْرِيَنَّكَ بِهِمْ ثُمَّ لَا يُجَاوِرُونَكَ فِيهَا إِلَّا قَلِيلًا ﴿٦١﴾

६२. (त्यसपछि तिनीहरू) लाञ्छित (हुनेछन्) । जहाँ जहाँ तिनीहरू पाइन्छन्, तिनीहरूलाई समातिनेछ र काटेर टुक्रा टुक्रा पारिनेछ ।

مَلْعُونِينَ ۛ أَيْنَمَا ثُقِفُوا أُخِذُوا وَقُتِّلُوا تَقْتِيلًا ﴿٦٢﴾

६३. पहिला बितिसकेका व्यक्तिहरूका (सम्बन्धमा पनि) अल्लाहको यही तरिका प्रचलित रहँदै आएको छ, तथा अल्लाहको तरिका (विधान) मा तिमीले कदापि परिवर्तन (भएको) पाउनेछैनौ ।

سُنَّةَ اللَّهِ فِي الَّذِينَ خَلَوْا مِنْ قَبْلُ ۖ وَلَنْ تَجِدَ لِسُنَّةِ اللَّهِ تَبْدِيلًا ﴿٦٣﴾

६४. मानिसहरू तिमीसित निर्धारित घडीका सम्बन्धमा सोध्छन् । तिमी भन,

يَسْأَلُكَ النَّاسُ عَنِ السَّاعَةِ ۖ قُلْ

إِنَّمَا عِلْمُهَا عِنْدَ اللَّهِ ۚ وَمَا يُدْرِيكَ لَعَلَّ السَّاعَةَ تَكُونُ قَرِيبًا ﴿٦٣﴾

'त्यसको ज्ञान ता केवल अल्लाहलाई मात्र प्राप्त छ ।' तथा त्यो घडी अति निकट रहेको छ भन्ने कुराको ज्ञान तिमीलाई कसरी हुन सक्छ र?

إِنَّ اللَّهَ لَعَنَ الْكَافِرِينَ وَأَعَدَّ لَهُمْ سَعِيرًا ﴿٦٤﴾

६४. अल्लाहले निश्चयपूर्वक अविश्वासी-हरूलाई लाञ्छित तुल्याएका छन्, तथा तिनीहरूका निम्ति एउटा प्रज्वलित अग्नि तयार पारेका छन्,

خَالِدِينَ فِيهَا أَبَدًا ۖ لَا يَجِدُونَ وَلِيًّا وَلَا نَصِيرًا ﴿٦٥﴾

६५. जहाँ तिनीहरू सदा बसोबास गर्नेछन् । (त्यहाँ) तिनीहरूले न कोही मित्र पाउनेछन् न त सहयोगी नै ।

يَوْمَ تُقَلَّبُ وُجُوهُهُمْ فِي النَّارِ يَقُولُونَ يَا لَيْتَنَا أَطَعْنَا اللَّهَ وَأَطَعْنَا الرَّسُولَا ﴿٦٦﴾

६६. त्यसदिन जब तिनीहरूको मुहारलाई अग्निमा उल्टाइ-पल्टाइ गरिनेछ, (तब) तिनीहरूले भन्नेछन्, 'हाय, यदि हामीले अल्लाहको र सन्देशवाहकको आज्ञा मानेका भए !'

وَقَالُوا رَبَّنَا إِنَّا أَطَعْنَا سَادَتَنَا وَكُبَرَاءَنَا فَأَضَلُّونَا السَّبِيلَا ﴿٦٧﴾

६७. तथा तिनीहरूले भन्नेछन्, 'हे हाम्रा प्रतिपालक, हामीले आफ्ना मुखियाहरू र ठूला-बडाको भनाइ मान्यौं, तथा तिनीहरूले हामीलाई सन्मार्गबाट पथभ्रष्ट तुल्याए ।

رَبَّنَا آتِهِمْ ضِعْفَيْنِ مِنَ الْعَذَابِ وَالْعَنْهُمْ لَعْنًا كَبِيرًا ﴿٦٨﴾

६८. 'हे हाम्रा प्रतिपालक, तिनीहरूलाई दोब्बर दण्ड देउ तथा तिनीहरूलाई पूर्ण रूपमा लाञ्छित तुल्याऊ ।'

يَا أَيُّهَا الَّذِينَ آمَنُوا لَا تَكُونُوا كَالَّذِينَ آذَوْا مُوسَىٰ فَبَرَّأَهُ اللَّهُ مِمَّا قَالُوا ۚ وَكَانَ عِنْدَ اللَّهِ وَجِيهًا ﴿٦٩﴾

६९. हे विश्वासीजन हो ! तिमीहरू ती व्यक्तिहरूसरह नबन जसले (मिथ्या अपवाद लगाइ) मूसालाई दुःख दिएका थिए; अल्लाहले उनलाई तिनीहरूले (उनीमाथि) लगाएको अपवादबाट मुक्त गरे । तथा उनी अल्लाहका दृष्टिमा सम्माननीय थिए ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا اتَّقُوا اللَّهَ وَقُولُوا قَوْلًا سَدِيدًا ﴿٧٠﴾

७०. हे विश्वासी जन हो ! अल्लाहसित डराऊ, तथा सत्य कुरा गर ।

يُّصۡلِحۡ لَكُمۡ اَعۡمَالَكُمۡ وَيَغۡفِرۡ لَكُمۡ ذُنُوۡبَكُمۡ ؕ وَمَنۡ يُّطِعِ اللّٰهَ وَرَسُوۡلَهٗ فَقَدۡ فَازَ فَوۡزًا عَظِيۡمًا ﴿۷۱﴾

७१. (उनले) तिमीहरूका निम्ति तिमीहरूका व्यवहारहरू सुधार्ने छन्, तथा तिमीहरूका पापहरू क्षमा गर्नेछन् । तथा जसले अल्लाह र उनका सन्देशवाहकको अनुसरण गर्छ त्यसले निश्चय नै ठूलो कृतकार्यता प्राप्त गर्नेछ ।

اِنَّا عَرَضۡنَا الۡاَمَانَةَ عَلَى السَّمٰوٰتِ وَالۡاَرۡضِ وَالۡجِبَالِ فَاَبَيۡنَ اَنۡ يَّحۡمِلۡنَهَا وَاَشۡفَقۡنَ مِنۡهَا وَحَمَلَهَا الۡاِنۡسَانُ ؕ اِنَّهٗ كَانَ ظَلُوۡمًا جَهُوۡلًا ۙ﴿۷۲﴾

७२. वस्तुतः हामीले आकाशमण्डल र पृथ्वी तथा पर्वतहरूलाई अमानत (जिम्मेवारी) पेश गरेका थियौं, परन्तु तिनीहरूले त्यसलाई उठाउन अस्वीकार गरे तथा त्यसबाट त्रसित भए । परन्तु मानिसले त्यसलाई उठायो । निश्चयपूर्वक, त्यो स्वयम्‌माथि कठोर व्यवहार गर्ने तथा जिम्मेवारीको) परिणामको पर्वाह नगर्ने (स्वभावको) थियो ।

لِّيُعَذِّبَ اللّٰهُ الۡمُنٰفِقِيۡنَ وَالۡمُنٰفِقٰتِ وَالۡمُشۡرِكِيۡنَ وَالۡمُشۡرِكٰتِ وَيَتُوۡبَ اللّٰهُ عَلَى الۡمُؤۡمِنِيۡنَ وَالۡمُؤۡمِنٰتِ ؕ وَكَانَ اللّٰهُ غَفُوۡرًا رَّحِيۡمًا ﴿۷۳﴾

७३. ताकि (त्यसको परिणामस्वरूप) अल्लाहले ढोँगी पुरुषहरू तथा ढोँगी महिलाहरूलाई र मूर्तिपुजक पुरुषहरू तथा मूर्तिपुजक महिलाहरूलाई दण्ड दिउन्; तथा विश्वासी पुरुषहरू र विश्वासी महिलातर्फ अल्लाह कृपादृष्टि गरून्; तथा अल्लाह परम क्षमाशील, परम दानशील छन् ।

سُوْرَةُ سَبَاٍ مَّكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ خَمْسٌ وَّخَمْسُوْنَ اٰيَةً وَّسِتَّةُ رُكُوْعَاتٍ

## अल्- सबा'
(हिजरतअघि अवतरित)

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

२. आकाशमण्डल तथा पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरू जसका रहेका छन्, सम्पूर्ण प्रशंसा तिनै अल्लाहका निम्ति रहेको छ । तथा परलोकमा पनि सम्पूर्ण प्रशंसा उनकै निम्ति रहेको छ; तथा उनी परम तत्वज्ञ, सर्वविदित छन् ।

اَلْحَمْدُ لِلّٰهِ الَّذِيْ لَهٗ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْاَرْضِ وَلَهُ الْحَمْدُ فِي الْاٰخِرَةِ ؕ وَهُوَ الْحَكِيْمُ الْخَبِيْرُ ②

३. जुन वस्तु पृथ्वीमा प्रवेश गर्छ र जुन वस्तु त्यहाँबाट बाहिर निस्कन्छ, तथा जुन वस्तु आकाशबाट अवतीर्ण हुन्छ र जुन वस्तु त्यसतर्फ चढ्छ अल्लाहले (ती सबैलाई) जान्छन्; तथा उनी परम करुणाशील, परम क्षमाशील छन् ।

يَعْلَمُ مَا يَلِجُ فِي الْاَرْضِ وَمَا يَخْرُجُ مِنْهَا وَمَا يَنْزِلُ مِنَ السَّمَآءِ وَمَا يَعْرُجُ فِيْهَا ؕ وَهُوَ الرَّحِيْمُ الْغَفُوْرُ ③

४. तथा अविश्वासी व्यक्तिहरू भन्छन्, "हामीमाथि निर्धारित घडी (विनाश) कहिल्यै आउनेछैन ।" तिमी भन, "सुन, मेरा अदृश्य कुराहरूका ज्ञाता, प्रतिपालकको कसम, त्यो अवश्य तिमीहरूमाथि आउनेछ ! आकाशमण्डल र पृथ्वीमा रहेका कणसमान (वस्तुहरू) अथवा त्यसभन्दा साना अथवा त्यस भन्दा ठूला कुनै (वस्तुहरू) उनका दृष्टिबाट बच्न सक्दैनन्, अपितु (ती सबै वस्तुहरू) एउटा प्रकाश्य पुस्तकमा (लिपिवद्ध रहेका छन्),

وَقَالَ الَّذِيْنَ كَفَرُوْا لَا تَاْتِيْنَا السَّاعَةُ ؕ قُلْ بَلٰى وَرَبِّيْ لَتَاْتِيَنَّكُمْ ۙ عٰلِمِ الْغَيْبِ ۚ لَا يَعْزُبُ عَنْهُ مِثْقَالُ ذَرَّةٍ فِي السَّمٰوٰتِ وَلَا فِي الْاَرْضِ وَلَآ اَصْغَرُ مِنْ ذٰلِكَ وَلَآ اَكْبَرُ اِلَّا فِيْ كِتٰبٍ مُّبِيْنٍ ۙ ③

५. "ताकि उनले विश्वासी र पुण्यकर्मीहरूलाई प्रतिदान प्रदान गरून् । ती उनै व्यक्तिहरू हुन् जसलाई क्षमादान

لِّيَجْزِيَ الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ ؕ اُولٰٓئِكَ لَهُمْ مَّغْفِرَةٌ وَّرِزْقٌ كَرِيْمٌ ⑤

तथा सम्मानजनक जीविका प्राप्त हुनेछ।"

وَالَّذِيْنَ سَعَوْ فِيْٓ اٰيٰتِنَا مُعٰجِزِيْنَ أُولٰٓئِكَ لَهُمْ عَذَابٌ مِّنْ رِّجْزٍ اَلِيْمٌ ﴿٦﴾

६. परन्तु ती व्यक्तिहरू, जसले (हाम्रा योजनाहरूलाई) असफल गर्नका निम्ति हाम्रा चिह्नहरूविरुद्ध प्रयत्न गर्छन् तिनीहरू नै ती व्यक्तिहरू हुन् जसलाई कष्टदायक दण्डको यातना मिल्नेछ।

وَيَرَى الَّذِيْنَ اُوْتُوا الْعِلْمَ الَّذِيْٓ اُنْزِلَ اِلَيْكَ مِنْ رَّبِّكَ هُوَ الْحَقَّ ۙ وَيَهْدِيْٓ اِلٰى صِرَاطِ الْعَزِيْزِ الْحَمِيْدِ ﴿٧﴾

७. तथा जसलाई ज्ञान प्रदान गरिएको छ तिनीहरू तिमीप्रति तिम्रा प्रतिपालकका तर्फबाट अवतीर्ण गरिएका कुराहरूलाई सत्य मान्छन् तथा परम पराक्रमी, परम प्रशंसनीय (अल्लाहको) मार्गतर्फ त्यसले मार्गदर्शन गर्छ (भन्ने मान्छन्)।

وَقَالَ الَّذِيْنَ كَفَرُوْا هَلْ نَدُلُّكُمْ عَلٰى رَجُلٍ يُّنَبِّئُكُمْ اِذَا مُزِّقْتُمْ كُلَّ مُمَزَّقٍ ۙ اِنَّكُمْ لَفِيْ خَلْقٍ جَدِيْدٍ ﴿٨﴾

८. तथा अविश्वासी व्यक्तिहरू भन्छन्, "के तिमीहरूलाई हामी एउटा यस्तो व्यक्ति देखाऔं जसले तिमीहरूलाई तिमीहरू (मरेर) कण-कणमा परिणत भएपश्चात्, तिमीहरूलाई एउटा नयाँ सृष्टिको रूपमा (जीवित) गरिनेछ भनी भन्नेछ?

اَفْتَرٰى عَلَى اللّٰهِ كَذِبًا اَمْ بِهٖ جِنَّةٌ ۭ بَلِ الَّذِيْنَ لَا يُؤْمِنُوْنَ بِالْاٰخِرَةِ فِي الْعَذَابِ وَالضَّلٰلِ الْبَعِيْدِ ﴿٩﴾

९. "के त्यसले अल्लाहविरुद्ध एउटा मिथ्या (झूठ) गढेको छ, अथवा उसलाई पागलपनले छोएको छ?" होइन, अपितु जुन व्यक्तिहरू परलोकप्रति विश्वास गर्दैनन् तिनीहरू नै दण्डभोगी तथा हदसम्मका पथभ्रष्ट हुन पुगेका छन्।

اَفَلَمْ يَرَوْا اِلٰى مَا بَيْنَ اَيْدِيْهِمْ وَمَا خَلْفَهُمْ مِّنَ السَّمَآءِ وَالْاَرْضِ ۭ اِنْ نَّشَاْ نَخْسِفْ بِهِمُ الْاَرْضَ اَوْ نُسْقِطْ عَلَيْهِمْ كِسَفًا مِّنَ السَّمَآءِ ۭ اِنَّ فِيْ ذٰلِكَ لَاٰيَةً لِّكُلِّ عَبْدٍ مُّنِيْبٍ ﴿١٠﴾

१०. आकाशमण्डल र पृथ्वीमा जुन वस्तु तिनीहरूका अघि र जुन वस्तु तिनीहरूका पछि रहेका छन्, के ती वस्तुहरूलाई तिनीहरूले देखेका छैनन् र? यदि हामीले चाहेमा पृथ्वीलाई तिनीहरूसहित धसाउन सक्छौं, अथवा आकाशबाट केही टुक्राहरू तिनीहरूमाथि खसाल्न सक्छौं। यस कुरामा हरेक झुक्ने (प्रायश्चितकारी) सेवकका निम्ति निश्चयपूर्वक एउटा चिह्न रहेको छ

११. तथा निस्सन्देह हामीले डेभिड (दाऊद) लाई आफ्ना जुनाफबाट कृपाप्रदान गरेका थियौं: "हे पर्वतहरू हो, तथा हे पक्षीहरू हो, (तिमीहरू पनि) उनीसित मिलेर पूर्ण आज्ञाकारिताका साथ अल्लाहतर्फ झुक ।" तथा उनका निम्ति हामीले फलामलाई नरम गरेका थियौं,

وَلَقَدْ آتَيْنَا دَاوُدَ مِنَّا فَضْلًا ۖ يَا جِبَالُ أَوِّبِي مَعَهُ وَالطَّيْرَ ۖ وَأَلَنَّا لَهُ الْحَدِيدَ ﴿١١﴾

१२. (के भन्दै भने), "तिमी पूर्णाकारको जङ्गी पोशाक (कवच) बनाउ, तथा त्यसका घेराहरू उचित अनुपातका बनाऊ । तथा पुण्यकार्य गर, म निश्चयपूर्वक तिमीहरूका सम्पूर्ण कार्यहरू देखिरहेछु ।"

أَنِ اعْمَلْ سَابِغَاتٍ وَقَدِّرْ فِي السَّرْدِ ۖ وَاعْمَلُوا صَالِحًا ۖ إِنِّي بِمَا تَعْمَلُونَ بَصِيرٌ ﴿١٢﴾

१३. तथा -हामीले) हावालाई सुलेमानको (सेवामा खटाएका थियौं); त्यसको बिहानीको प्रवाह एक महिनाको -यात्रा बराबर) थियो, तथा त्यसको बेलुकीको प्रवाह (पनि) एक महिनाको (यात्रा बराबर नै) थियो । तथा उनका निम्ति हामीले एउटा पग्लिएको ताँबाको मूल चलाएका थियौं । तथा जिन्नहरूमध्ये (केही जिन्न) यस्ता थिए जसले उनका प्रतिपालकको आदेशानुसार उनीअन्तर्गत रही कार्य गर्थे । तथा यदि तिनीहरूमध्ये कसैले हाम्रो आदेश उल्लङ्घन गरेमा हामी त्यसलाई प्रज्वलित अग्निको दण्ड दिनेछौं (भनी हामीले तिनीहरूलाई भनेका थियौं) ।

وَلِسُلَيْمَانَ الرِّيحَ غُدُوُّهَا شَهْرٌ وَرَوَاحُهَا شَهْرٌ ۖ وَأَسَلْنَا لَهُ عَيْنَ الْقِطْرِ ۖ وَمِنَ الْجِنِّ مَنْ يَعْمَلُ بَيْنَ يَدَيْهِ بِإِذْنِ رَبِّهِ ۖ وَمَنْ يَزِغْ مِنْهُمْ عَنْ أَمْرِنَا نُذِقْهُ مِنْ عَذَابِ السَّعِيرِ ﴿١٣﴾

१४. उनले जे इच्छा गर्थे तिनीहरूले उनका निम्ति त्यही बनाउने गर्थे, (जस्तै) महलहरू र प्रतिमाहरू तथा कुण्डस्वरूप खड्कुँलाहरू, आफ्ना स्थानमा स्थिर (ट्याँकीजस्ता) ठूला भोजन पकाउने भाँडाहरू: "हे दाऊदका परिवार(का

يَعْمَلُونَ لَهُ مَا يَشَاءُ مِنْ مَحَارِيبَ وَتَمَاثِيلَ وَجِفَانٍ كَالْجَوَابِ وَقُدُورٍ رَاسِيَاتٍ ۚ اعْمَلُوا آلَ دَاوُدَ شُكْرًا ۚ وَقَلِيلٌ مِنْ عِبَادِيَ الشَّكُورُ ﴿١٤﴾

मानिसहरू) हो, तिमीहरू कृतज्ञताका साथ कार्य गर", परन्तु मेरा सेवकहरूमध्ये थोरै मात्र कृतज्ञ रहेका छन् ।

فَلَمَّا قَضَيْنَا عَلَيْهِ الْمَوْتَ مَا دَلَّهُمْ عَلَىٰ مَوْتِهِ إِلَّا دَابَّةُ الْأَرْضِ تَأْكُلُ مِنسَأَتَهُ ۖ فَلَمَّا خَرَّ تَبَيَّنَتِ الْجِنُّ أَن لَّوْ كَانُوا يَعْلَمُونَ الْغَيْبَ مَا لَبِثُوا فِي الْعَذَابِ الْمُهِينِ ﴿١٤﴾

१५. तथा जब हामीले उनको (सुलेमानको) मृत्युबारे निर्णय गऱ्यौं (तब) तिनीहरूलाई उनको मृत्युको सूचना केवल एउटा यस्तो धर्तीको कीरा (उनको अयोग्य पुत्र)ले दियो जसले उनको (शासनको) लौरो भक्षण गरिरहेथ्यो । अतः जब त्यो ढल्यो, तब जिन्नहरूले स्पष्ट रूपमा के बुझे भने, यदि तिनीहरूलाई अदृश्यको ज्ञान रहेको भए तिनीहरू अपमानजनक दण्ड भोगिरहने थिएनन्* ।

لَقَدْ كَانَ لِسَبَإٍ فِي مَسْكَنِهِمْ آيَةٌ ۖ جَنَّتَانِ عَن يَمِينٍ وَشِمَالٍ ۖ كُلُوا مِن رِّزْقِ رَبِّكُمْ وَاشْكُرُوا لَهُ ۚ بَلْدَةٌ طَيِّبَةٌ وَرَبٌّ غَفُورٌ ﴿١٥﴾

१६. सबा' - जाति)का निम्ति तिनीहरूको देशमा निश्चय नै एउटा चिह्न थियो; दुईवटा बगैँचाहरू– एउटा दाहिनेतर्फ र अर्को चाहिँ देब्रेतर्फ रहेको थियो । "आफ्ना प्रतिपालकप्रदत्त जीविका (खाद्यान्न)बाट खाऊ, तथा उनका कृतज्ञ बन । (यो) एउटा उत्तम नगर रहेको छ तथा परम क्षमाशील प्रतिपालक रहेका छन् ।"

فَأَعْرَضُوا فَأَرْسَلْنَا عَلَيْهِمْ سَيْلَ الْعَرِمِ وَبَدَّلْنَاهُم بِجَنَّتَيْهِمْ جَنَّتَيْنِ

१७. परन्तु तिनीहरू विमुख भए; त्यसकारण हामीले तिनीहरूविरुद्ध एउटा बाँध भत्काएर बग्ने विध्वंसक बाढी पठायौं

---

* टिप्पणी : दाअब्बा ( دَابَّةٌ ) शब्द हरेक श्रेणीका प्राणीहरूप्रति प्रयोग हुन्छ । अतः "धर्तीको कीरो" अनुवादलाई शाब्दिकरूपमा नभएर केवल रूपकात्मकरूपमा लिन सकिन्छ । यहाँ सुलेमानको त्यस पुत्रको उल्लेख गरिएको छ जसमा आध्यात्मिक गुणहरूको र राज्य सञ्चालन गर्ने कलाको, जुन क्षेत्रमा उनका महान पिता प्रसिद्ध थिए, कुनै अंश थिएन । सुलेमानद्वारा दमन गरी तथा अधीनस्थ पारी राखिएका ती शक्तिशाली सरदार (जिन्न)हरूप्रति सुलेमान अब व्यावहारिकरूपमा पतन भइसकेका छन् भन्ने कुरो उनको शासनकालमै विस्तार-विस्तारै स्पष्ट हुन लागेको थियो । अतः तिनीहरूले शासनविरुद्ध सफल विद्रोह गरे तथा त्यस महान साम्राज्यलाई खण्ड-विखण्ड तुल्याए ।

ذَوَاتَيْ أُكُلٍ خَمْطٍ وَّأَثْلٍ وَّشَيْءٍ مِّنْ سِدْرٍ قَلِيْلٍ ﴿١٧﴾

। तथा हामीले तिनीहरूका बगैँचाहरूका बदलामा दुईवटा तीता फलयुक्त बगैँचाहरू तिनीहरूलाई दियौं जसमा झ्याउ तथा केही बयरका वृक्षहरू थिए ।

ذٰلِكَ جَزَيْنٰهُمْ بِمَا كَفَرُوْا ۖ وَهَلْ نُجٰزِيْٓ اِلَّا الْكَفُوْرَ ﴿١٨﴾

१८. तिनीहरूको कृतघ्नताका कारण हामीले तिनीहरूलाई त्यो प्रतिदान दियौं; तथा अकृतज्ञ व्यक्तिहरूलाई हामी (यसै प्रकार) बदला दिने गर्छौं ।

وَجَعَلْنَا بَيْنَهُمْ وَبَيْنَ الْقُرَى الَّتِيْ بٰرَكْنَا فِيْهَا قُرًى ظَاهِرَةً وَّقَدَّرْنَا فِيْهَا السَّيْرَ ۖ سِيْرُوْا فِيْهَا لَيَالِيَ وَاَيَّامًا اٰمِنِيْنَ ﴿١٩﴾

१९. तथा हामीले तिनीहरूका र ती हामीले मङ्गलमय तुल्याएका नगरहरूका बीचमा धेरै (यस्ता अन्य) नगरहरू खडा गरेका थियौं, जुन परस्पर आमुन्ने-सामुन्ने र पूर्णरूपमा प्रकाश्य थिए, तथा तिनीहरूका बीच-बीचमा हामीले सुविधाजनक अडानहरू निर्धारित गरेका थियौं: "तिनीहरूका बीचमा रात-दिन शान्ति सुरुक्षाका साथ यात्रा गर" ।

فَقَالُوْا رَبَّنَا بٰعِدْ بَيْنَ اَسْفَارِنَا وَظَلَمُوْٓا اَنْفُسَهُمْ فَجَعَلْنٰهُمْ اَحَادِيْثَ وَمَزَّقْنٰهُمْ كُلَّ مُمَزَّقٍ ۗ اِنَّ فِيْ ذٰلِكَ لَاٰيٰتٍ لِّكُلِّ صَبَّارٍ شَكُوْرٍ ﴿٢٠﴾

२०. परन्तु तिनीहरूले भने, "हे हाम्रा प्रतिपालक, हाम्रा यात्राका (अडानहरूका) बीचमा दूरत्व बढाइदेउ ।" तथा तिनीहरूले स्वयम्माथि अत्याचार गरे; त्यसकारण हामीले तिनीहरूलाई कथास्वरूप बनायौं तथा तिनीहरूलाई टुक्रा-टुक्रा पारी पूर्णरूपले विनाश गर्‍यौं । यसमा हरेक धैर्यधारी र कृतज्ञ व्यक्तिका निम्ति निश्चयपूर्वक धेरै चिह्नहरू छन् ।

وَلَقَدْ صَدَّقَ عَلَيْهِمْ اِبْلِيْسُ ظَنَّهٗ فَاتَّبَعُوْهُ اِلَّا فَرِيْقًا مِّنَ الْمُؤْمِنِيْنَ ﴿٢١﴾

२१. तथा तिनीहरूका बारेमा इब्लिसले आफ्नो धारणा सत्य रहेको पायो, अतः एउटा (साँचा) विश्वासीहरूको समूहले बाहेक तिनीहरू (सबै)ले उसको अनुसरण गरे ।

وَمَا كَانَ لَهٗ عَلَيْهِمْ مِّنْ سُلْطٰنٍ اِلَّا لِنَعْلَمَ مَنْ يُّؤْمِنُ بِالْاٰخِرَةِ مِمَّنْ هُوَ

२२. तथा तिनीहरूमाथि उसलाई कुनै क्षमता प्राप्त थिएन, परन्तु (त्यसो हुन

مِنْهَا فِيْ شَكٍّ ۚ وَرَبُّكَ عَلٰى كُلِّ شَيْءٍ حَفِيْظٌ ﴿٢١﴾ ع ٢

गयो) ताकि हामी परलोकप्रति विश्वास गर्ने व्यक्तिहरूलाई त्यसप्रति सन्देह गर्ने व्यक्तिहरूबाट पृथक गर्न सकौं । तथा तिम्रा प्रतिपालक सम्पूर्ण वस्तुहरूका संरक्षक रहेका छन् ।

قُلِ ادْعُوا الَّذِيْنَ زَعَمْتُمْ مِّنْ دُوْنِ اللّٰهِ ۚ لَا يَمْلِكُوْنَ مِثْقَالَ ذَرَّةٍ فِي السَّمٰوٰتِ وَلَا فِي الْاَرْضِ وَمَا لَهُمْ فِيْهِمَا مِنْ شِرْكٍ وَّمَا لَهٗ مِنْهُمْ مِّنْ ظَهِيْرٍ ﴿٢٢﴾

२३. तिमी भन, "तिमीहरू अल्लाहलाई छाडी जसलाई (आफ्ना उपास्य) ठान्छौ तिनीहरूलाई पुकार । आकाशमण्डल अथवा पृथ्वीमा एउटा कण बराबरको वस्तुमा (समेत) तिनीहरूको कुनै अधिकार छैन, न त तिनीहरूमध्ये कुनैमा तिनीहरूको केही भागेदारी रहेको छ, न तिनीहरूमध्ये कोही उनको सहयोगी नै रहेको छ ।"

وَلَا تَنْفَعُ الشَّفَاعَةُ عِنْدَهٗٓ اِلَّا لِمَنْ اَذِنَ لَهٗ ۚ حَتّٰٓى اِذَا فُزِّعَ عَنْ قُلُوْبِهِمْ قَالُوْا مَاذَا ۙ قَالَ رَبُّكُمْ ۚ قَالُوا الْحَقَّ ۚ وَهُوَ الْعَلِيُّ الْكَبِيْرُ ﴿٢٣﴾

२४. जसलाई उनले (त्यसको) अनुमति दिन्छन् उसको बाहेक अन्य कसैको सिफारिसले उनीसमक्ष केही लाभ दिनेछैन, अत: जब तिनीहरूको हृदयबाट डर समाप्त हुन्छ तब तिनीहरूले भन्नेछन्, "तिमीहरूका प्रतिपालकले के भनेका थिए त? "तिनीहरूले (सन्देशवाहकहरूले) उत्तर दिनेछन्, "सत्य (कुरा) ।" तथा उनी सर्वोच्च, महान छन् ।

قُلْ مَنْ يَّرْزُقُكُمْ مِّنَ السَّمٰوٰتِ وَالْاَرْضِ ۚ قُلِ اللّٰهُ ۙ وَاِنَّآ اَوْ اِيَّاكُمْ لَعَلٰى هُدًى اَوْ فِيْ ضَلٰلٍ مُّبِيْنٍ ﴿٢٤﴾

२५. तिमी भन, "आकाशमण्डल र पृथ्वीबाट कसले तिमीहरूलाई जीविका प्रदान गर्छ त? भन, "अल्लाहले । या त हामी अथवा तिमीहरू सन्मार्गमा छौं अथवा स्पष्टरूपमा पथभ्रष्ट ।"

قُلْ لَّا تُسْـَٔلُوْنَ عَمَّآ اَجْرَمْنَا وَلَا نُسْـَٔلُ عَمَّا تَعْمَلُوْنَ ﴿٢٥﴾

२६. तिमी भन, "हाम्रा पापहरूका सम्बन्धमा तिमीहरूलाई सोधिनेछैन, न त हामीलाई तिमीहरूका क्रियाकलापहरूका बारेमा नै सोधिनेछ ।"

قُلْ يَجْمَعُ بَيْنَنَا رَبُّنَا ثُمَّ يَفْتَحُ بَيْنَنَا بِالْحَقِّ ۚ وَهُوَ الْفَتَّاحُ الْعَلِيْمُ ﴿٢٦﴾

२७. तिमी भन, "हाम्रा प्रतिपालकले हामीलाई एकत्रित गर्नेछन्; त्यसपछि उनले

हामीहरूका बीचमा सत्यका साथ निर्णय गर्नेछन्: तथा उनी नै सर्वश्रेष्ठ निर्णायक, सर्वज्ञ छन् ।"

قُلْ أَرُونِيَ ٱلَّذِينَ أَلْحَقْتُم بِهِۦ شُرَكَآءَ كَلَّا ۚ بَلْ هُوَ ٱللَّهُ ٱلْعَزِيزُ ٱلْحَكِيمُ ﴿٢٧﴾

२८. तिमी भन, "जसलाई तिमीहरूले उनका भागीदारस्वरूप उनीसित जोडेका छौ ती वस्तुहरू मलाई देखाऊ । होइन ! - तिमीहरू कदापि त्यसो गर्न सक्दैनौ), वस्तुत: अल्लाह नै सर्व शक्तिमान, परम तत्वज्ञ रहेका छन् ।"

وَمَآ أَرْسَلْنَٰكَ إِلَّا كَآفَّةً لِّلنَّاسِ بَشِيرًا وَنَذِيرًا وَلَٰكِنَّ أَكْثَرَ ٱلنَّاسِ لَا يَعْلَمُونَ ﴿٢٨﴾

२९. तथा हामीले तिमीलाई सम्पूर्ण मानवजातिका निम्ति एकजना शुभसन्देश वाहक तथा सचेतकस्वरूप पठाएका छौं, परन्तु अधिकतर मानिसहरू (यो) जान्दैनन्

وَيَقُولُونَ مَتَىٰ هَٰذَا ٱلْوَعْدُ إِن كُنتُمْ صَٰدِقِينَ ﴿٢٩﴾

३०. तथा तिनीहरू भन्छन्, "यदि तिमीहरू साँचा हौ भने, त्यो प्रतिश्रुति कहिले (पूर्ण हुन्छ) त?"

قُل لَّكُم مِّيعَادُ يَوْمٍ لَّا تَسْتَـْٔخِرُونَ عَنْهُ سَاعَةً وَلَا تَسْتَقْدِمُونَ ﴿٣٠﴾

३१. तिमी भन, "तिमीहरूका निम्ति एउटा यस्तो निर्धारित दिनको प्रतिश्रुति रहेको छ जसबाट न तिमीहरू एकक्षण पछि रहन सक्नेछौ न त (त्यसबाट) अघि बढ्न नै ।"

وَقَالَ ٱلَّذِينَ كَفَرُوا۟ لَن نُّؤْمِنَ بِهَٰذَا ٱلْقُرْءَانِ وَلَا بِٱلَّذِى بَيْنَ يَدَيْهِ ۗ وَلَوْ تَرَىٰٓ إِذِ ٱلظَّٰلِمُونَ مَوْقُوفُونَ عِندَ رَبِّهِمْ يَرْجِعُ بَعْضُهُمْ إِلَىٰ بَعْضٍ ٱلْقَوْلَ يَقُولُ ٱلَّذِينَ ٱسْتُضْعِفُوا۟ لِلَّذِينَ ٱسْتَكْبَرُوا۟ لَوْلَآ أَنتُمْ لَكُنَّا مُؤْمِنِينَ ﴿٣١﴾

३२. तथा अविश्वासी व्यक्तिहरू भन्छन्, "हामी न यस कुरानप्रति न त यसभन्दा पहिलाको प्रति नै विश्वास गर्नेछौं," जब ती अत्याचारी- हरूलाई तिनीहरूका प्रतिपालकका सामुन्ने खडा गरिनेछ त्यस अवस्थामा तिनीहरू कसरी एक- अर्कामाथि आरोप (प्रत्यारोप) लगाउनेछन्, यदि तिमीले (त्यो दृश्य) देख्न सक्ने भए ! जुन व्यक्तिहरूलाई दुर्बल ठानिएको थियो तिनीहरूले अहङ्कारी व्यक्तिहरूलाई भन्नेछन्, "यदि तिमीहरू न रहेका भए

हामी अवश्य विश्वासी बन्नेथियौं ।

३३. अहङ्कारी स्वभावका व्यक्तिहरूले दुर्बल ठानिएका व्यक्तिहरूलाई भन्नेछन्, "के हामीले नै तिमीहरूलाई मार्गदर्शनबाट त्यसको आगमन पश्चात् रोकेका थियौं त? होइन, अपितु तिमीहरू स्वयम् अपराधी थियौ ।"

قَالَ الَّذِيْنَ اسْتَكْبَرُوْا لِلَّذِيْنَ اسْتُضْعِفُوْٓا اَنَحْنُ صَدَدْنٰكُمْ عَنِ الْهُدٰى بَعْدَ اِذْ جَآءَكُمْ بَلْ كُنْتُمْ مُّجْرِمِيْنَ ﴿٣٢﴾

३४. तथा ती दुर्बल ठानिएका व्यक्तिहरूले ती अहङ्कारी व्यक्तिहरूलाई भन्नेछन्, "होइन, अपितु (त्यो तिमीहरूको) रात दिनको योजना (कै फल) थियो, जब तिमीहरू हामीलाई अल्लाहप्रति अविश्वास गर्ने र उनका भागीदार तुल्याउने आदेश दिन्थ्यौ । " तथा जब तिनीहरूले दण्ड देख्नेछन् (आफ्नो) लज्जा लुकाउने प्रयास गर्नेछन्; तथा ती अविश्वासीहरूका गर्धनलाई हामी साङ्लाले बाँध्नेछौं । तिनीहरूको आफ्नै क्रियाकलापको फलस्वरूप नै तिनीहरूलाई दण्ड मिल्नेछ ।

وَقَالَ الَّذِيْنَ اسْتُضْعِفُوْا لِلَّذِيْنَ اسْتَكْبَرُوْا بَلْ مَكْرُ الَّيْلِ وَالنَّهَارِ اِذْ تَاْمُرُوْنَنَآ اَنْ نَّكْفُرَ بِاللّٰهِ وَنَجْعَلَ لَهٗٓ اَنْدَادًا ۭ وَاَسَرُّوا النَّدَامَةَ لَمَّا رَاَوُا الْعَذَابَ ۭ وَجَعَلْنَا الْاَغْلٰلَ فِيْٓ اَعْنَاقِ الَّذِيْنَ كَفَرُوْا ۭ هَلْ يُجْزَوْنَ اِلَّا مَا كَانُوْا يَعْمَلُوْنَ ﴿٣٣﴾

३५. तथा हामीले कुनै नगरतर्फ कहिल्यै कुनै सतर्ककारी पठाएनौं, परन्तु त्यहाँका धनसम्पन्न व्यक्तिहरूले भने, "जुन कुराका साथ तिमीलाई पठाइएको छ त्यस कुराप्रति हामी पटक्कै विश्वास गर्दैनौं ।"

وَمَآ اَرْسَلْنَا فِيْ قَرْيَةٍ مِّنْ نَّذِيْرٍ اِلَّا قَالَ مُتْرَفُوْهَآ ۙ اِنَّا بِمَآ اُرْسِلْتُمْ بِهٖ كٰفِرُوْنَ ﴿٣٤﴾

३६. तथा तिनीहरू भन्छन्,"हामी सम्पत्ति र सन्तानमा तिमीहरूभन्दा अधिक (धनी) छौं; तथा हामीलाई कदापि दण्ड दिइनेछैन ।"

وَقَالُوْا نَحْنُ اَكْثَرُ اَمْوَالًا وَّاَوْلَادًا ۙ وَّمَا نَحْنُ بِمُعَذَّبِيْنَ ﴿٣٥﴾

३७. तिमी भन, "वस्तुतः, मेरा प्रतिपालकले जसका निम्ति चाहन्छन् जीविका विस्तृत तुल्याउँछन् तथा (जसका निम्ति चाहन्छन् त्यसलाई) सङ्कीर्ण तुल्याउँछन्; परन्तु अधिकतर व्यक्तिहरू

قُلْ اِنَّ رَبِّيْ يَبْسُطُ الرِّزْقَ لِمَنْ يَّشَآءُ وَيَقْدِرُ وَلٰكِنَّ اَكْثَرَ النَّاسِ لَا يَعْلَمُوْنَ ﴿٣٦﴾

जान्दैनन् ।;

३८. तथा तिमीहरूको सम्पत्ति अथवा सन्तानले तिमीहरूलाई हाम्रा निकटमा स्थान प्रदान गर्नेछैनन्, परन्तु जसले विश्वास गर्छन् र पुण्यकार्य गर्छन्, तिनीहरूलाई भने तिनीहरूले गरेका कार्यहरूको दोब्बर प्रतिदान प्राप्त हुनेछ । तथा तिनीहरू नै उच्च निवास स्थानहरूमा शान्तिका साथ बसोबास गर्नेछन् ।

وَ مَآ اَمْوَالُكُمْ وَ لَآ اَوْلَادُكُمْ بِالَّتِيْ تُقَرِّبُكُمْ عِنْدَنَا زُلْفٰٓى اِلَّا مَنْ اٰمَنَ وَعَمِلَ صَالِحًا ز فَاُولٰٓئِكَ لَهُمْ جَزَآءُ الضِّعْفِ بِمَا عَمِلُوْا وَ هُمْ فِي الْغُرُفٰتِ اٰمِنُوْنَ ﴿٣٧﴾

३९. तथा जुन व्यक्तिहरूले हाम्रा चिह्नहरूको (उद्देश्यलाई) असफल तुल्याउने प्रयत्न गर्छन्, तिनीहरू नै ती व्यक्तिहरू हुन जसलाई दण्डका सामुन्ने उपस्थित गरिनेछ ।

وَ الَّذِيْنَ يَسْعَوْنَ فِيْٓ اٰيٰتِنَا مُعٰجِزِيْنَ اُولٰٓئِكَ فِي الْعَذَابِ مُحْضَرُوْنَ ﴿٣٨﴾

४०. तिमी भन, "मेरा प्रतिपालकले निश्चय नै आफ्ना सेवकहरूमध्ये जसका निम्ति इच्छा गर्छन् उसको जीविकालाई विस्तृत तुल्याउँछन्, तथा तिनीहरूमध्ये जसका निम्ति (उनले इच्छा गर्छन् त्यसलाई) सङ्कीर्ण तुल्याउँछन् । तथा जुनकुरा तिमीहरू खर्च गर्छौ, त्यसलाई उनले पूर्णरूपमा पुनः फर्काउने छन्; तथा उनी सर्वोत्तम जीविका प्रदानकारी रहेका छन् ।"

قُلْ اِنَّ رَبِّيْ يَبْسُطُ الرِّزْقَ لِمَنْ يَّشَآءُ مِنْ عِبَادِهٖ وَ يَقْدِرُ لَهٗ ؕ وَ مَآ اَنْفَقْتُمْ مِّنْ شَيْءٍ فَهُوَ يُخْلِفُهٗ ۚ وَ هُوَ خَيْرُ الرّٰزِقِيْنَ ﴿٣٩﴾

४१. तथा त्यसदिनको (स्मरण गर), जब उनले तिनीहरू सबैलाई एकत्रित गर्नेछन्; त्यसपछि उनले फरिस्ताहरूलाई भन्नेछन्: "के ती खास तिमीहरू नै थियौ जसको यिनीहरू उपासना गर्ने गर्थे? "

وَيَوْمَ يَحْشُرُهُمْ جَمِيْعًا ثُمَّ يَقُوْلُ لِلْمَلٰٓئِكَةِ اَهٰٓؤُلَآءِ اِيَّاكُمْ كَانُوْا يَعْبُدُوْنَ ﴿٤٠﴾

४२. तिनीहरूले भन्नेछन्, "तिमी पवित्र छौ । तिनीहरूविरुद्ध तिमी नै हाम्रा संरक्षक हौ । होइन, अपितु तिनीहरू ता जिन्न (अदृश्य प्राणी) को उपासना गर्ने गर्थे;

قَالُوْا سُبْحٰنَكَ اَنْتَ وَلِيُّنَا مِنْ دُوْنِهِمْ ۚ بَلْ كَانُوْا يَعْبُدُوْنَ الْجِنَّ ۚ اَكْثَرُهُمْ بِهِمْ مُّؤْمِنُوْنَ ﴿٤١﴾

तिनीहरूमध्ये अधिकतरले उनीहरूप्रति नै विश्वास गर्थे ।"

فَالْيَوْمَ لَا يَمْلِكُ بَعْضُكُمْ لِبَعْضٍ نَّفْعًا وَّلَا ضَرًّا ۚ وَنَقُوْلُ لِلَّذِيْنَ ظَلَمُوْا ذُوْقُوْا عَذَابَ النَّارِ الَّتِيْ كُنْتُمْ بِهَا تُكَذِّبُوْنَ ﴿٤٢﴾

४३. "अत:, आज तिमीहरूमा परस्पर एक-अर्काको हानि गर्ने अथवा लाभ पुऱ्याउने सामर्थ्य रहने छैन।" तथा अत्याचारी व्यक्तिहरूलाई हामी के भन्नेछौं भने: "त्यस अग्निको दण्ड चाख जसबारे तिमीहरूलाई विश्वास थिएन ।"

وَإِذَا تُتْلٰى عَلَيْهِمْ اٰيٰتُنَا بَيِّنٰتٍ قَالُوْا مَا هٰذَآ إِلَّا رَجُلٌ يُّرِيْدُ أَنْ يَّصُدَّكُمْ عَمَّا كَانَ يَعْبُدُ اٰبَآؤُكُمْ ۚ وَقَالُوْا مَا هٰذَآ إِلَّآ إِفْكٌ مُّفْتَرًى ۚ وَقَالَ الَّذِيْنَ كَفَرُوْا لِلْحَقِّ لَمَّا جَآءَهُمْ ۙ إِنْ هٰذَآ إِلَّا سِحْرٌ مُّبِيْنٌ ﴿٤٣﴾

४४. तथा जब तिनीहरूसमक्ष हाम्रा स्पष्ट चिह्नहरू पढेर सुनाइन्छ, तिनीहरू भन्छन्, "यो मानिस ता केवल तिमीहरूलाई तिनीहरूबाट विमुख गर्न चाहन्छ जसको तिमीहरूका पितृहरू उपासना गर्ने गर्थे ।" तथा तिनीहरू भन्छन्, "यो ता एउटा मनगढन्त मिथ्या कुरो हो ।" तथा अविश्वासी व्यक्तिहरू सत्यका सम्बन्धमा तिनीहरूसमक्ष त्यसको आगमनपश्चात् के भन्छन् भने, "यो ता खुल्लम खुल्ला जादू रहेको छ ।

وَمَآ اٰتَيْنٰهُمْ مِّنْ كُتُبٍ يَّدْرُسُوْنَهَا وَمَآ أَرْسَلْنَآ إِلَيْهِمْ قَبْلَكَ مِنْ نَّذِيْرٍ ﴿٤٤﴾

४५. तथा हामीले तिनीहरूलाई कुनै यस्तो पुस्तक प्रदान गरेका थिएनौं जसको तिनीहरू अध्ययन गरून्, न त तिमीभन्दा पहिला हामीले तिनीहरूतर्फ कोही सावधानकर्ता नै पठाएका थियौं ।

وَكَذَّبَ الَّذِيْنَ مِنْ قَبْلِهِمْ ۙ وَمَا بَلَغُوْا مِعْشَارَ مَآ اٰتَيْنٰهُمْ فَكَذَّبُوْا رُسُلِيْ ۫ فَكَيْفَ كَانَ نَكِيْرِ ﴿٤٥﴾

४६. तथा तिनीहरूभन्दा पहिलाका मानिसहरूले (पनि सत्यलाई) अस्वीकार गरेका थिए तथा हामीले तिनीहरूलाई प्रदान गरेको (शक्तिको) दशौं भाग (पनि) यिनीहरूलाई प्राप्त छैन, परन्तु तिनीहरूले हाम्रासन्देशवाहकहरू सितमिथ्यावादीहरू सरह व्यवहार गरे । अत: मैले ल्याएको त्यो परिवर्तन कस्तो डर लाग्दो थियो !

قُلْ اِنَّمَآ اَعِظُكُمْ بِوَاحِدَةٍ ۚ اَنْ تَقُوْمُوْا لِلّٰهِ مَثْنٰى وَ فُرَادٰى ثُمَّ تَتَفَكَّرُوْا ۫ مَا بِصَاحِبِكُمْ مِّنْ جِنَّةٍ ؕ اِنْ هُوَ اِلَّا نَذِيْرٌ لَّكُمْ بَيْنَ يَدَيْ عَذَابٍ شَدِيْدٍ ﴿۴۶﴾

४७. तिमी भन, "म तिमीहरूलाई केवल एउटा (कार्य गर्ने) अर्ती दिन्छु; अर्थात्, तिमीहरू दुई-दुई र एक्ला-एक्लै अल्लाहका सामुन्ने उभिएर चिन्तन-मनन गर । त्यसपछि (तिमीहरूलाई) तिमीहरूका साथीमा कुनै प्रकारको पागलपन रहेको छैन (भन्ने कुराको ज्ञान हुनेछ); उनी ता केवल निकट (भविष्यमा) आउने कठोर दण्डबारे तिमीहरूलाई सावधान गर्ने एकजना (व्यक्ति) हुन् ।"

قُلْ مَا سَاَلْتُكُمْ مِّنْ اَجْرٍ فَهُوَ لَكُمْ ؕ اِنْ اَجْرِيَ اِلَّا عَلَى اللّٰهِ ۚ وَهُوَ عَلٰى كُلِّ شَيْءٍ شَهِيْدٌ ﴿۴۷﴾

४८. तिमी भन, "तिमीहरूबाट जेसुकै प्रतिदान चाहेको भए पनि त्यो तिमीहरू कै निम्ति हुनेछ । मेरो प्रतिदान ता अल्लाहकै जुनाफमा रहेको छ; तथा उनी सम्पूर्ण वस्तुहरूलाई देखिरहेछन् ।"

قُلْ اِنَّ رَبِّيْ يَقْذِفُ بِالْحَقِّ ۚ عَلَّامُ الْغُيُوْبِ ﴿۴۸﴾

४९. तिमी भन, साँच्चै नै, मेरा प्रतिपालक सत्यलाई असत्यमाथि प्रक्षेपण गर्छन् । (उनी) अदृश्य (कुराहरू)का श्रेष्ठ ज्ञाता रहेका छन् ।"

قُلْ جَآءَ الْحَقُّ وَ مَا يُبْدِئُ الْبَاطِلُ وَ مَا يُعِيْدُ ﴿۴۹﴾

५०. तिमी भन, "सत्यको आगमन भइसकेको छ, तथा असत्यले न (कुनै कुरा) प्रारम्भ गर्न सक्छ न त (त्यसलाई) पुनरुत्पादन गर्न सक्छ ।"

قُلْ اِنْ ضَلَلْتُ فَاِنَّمَآ اَضِلُّ عَلٰى نَفْسِيْ ۚ وَاِنِ اهْتَدَيْتُ فَبِمَا يُوْحِيْٓ اِلَيَّ رَبِّيْ ؕ اِنَّهٗ سَمِيْعٌ قَرِيْبٌ ﴿۵۰﴾

५१. तिमी भन, "यदि म पथभ्रष्ट रहेमा, मेरो पथभ्रष्टता मेरै विरुद्ध हुनेछ, तथा यदि मलाई सन्मार्ग प्राप्त भएमा, त्यो केवल मेरा प्रतिपालकले मप्रति अवतीर्ण गरेको आकाशवाणीको फलस्वरूप (सम्भव भएको) हो । वस्तुतः उनी सर्वश्रोता, अति निकट (उपस्थित) छन् ।"

وَلَوْ تَرٰٓى اِذْ فَزِعُوْا فَلَا فَوْتَ وَ اُخِذُوْا مِنْ مَّكَانٍ قَرِيْبٍ ﴿۵۱﴾

५२. जब तिनीहरूलाई भयभीत तुल्याइनेछ यदि तिमीले त्यो अवस्था देख्न सक्ने भए ! तब भाग्न सम्भव हुनेछैन तथा

एउटा निकटको स्थानबाट तिनीहरूलाई समातिनेछ ।

وَّقَالُوْٓا اٰمَنَّا بِهٖ ۚ وَاَنّٰى لَهُمُ التَّنَاوُشُ مِنْ مَّكَانٍۭ بَعِيْدٍ ۝٥٢

५३. तथा तिनीहरूले भन्नेछन्, "(अब) हामी त्यसप्रति विश्वास गर्छौं ।" परन्तु त्यति टाढा पुगेर विश्वास प्राप्त गर्नु तिनीहरूका निम्ति कसरी सम्भव हुन सक्छ र* !

وَّقَدْ كَفَرُوْا بِهٖ مِنْ قَبْلُ ۚ وَيَقْذِفُوْنَ بِالْغَيْبِ مِنْ مَّكَانٍۭ بَعِيْدٍ ۝٥٣

५४. वस्तुतः पहिला टाढाबाटै व्यर्थ अनुमानित कुराहरूमा व्यस्त रही तिनीहरूले त्यसलाई अस्वीकार गरेका थिए

وَحِيْلَ بَيْنَهُمْ وَبَيْنَ مَا يَشْتَهُوْنَ كَمَا فُعِلَ بِاَشْيَاعِهِمْ مِّنْ قَبْلُ ۗ اِنَّهُمْ كَانُوْا فِيْ شَكٍّ مُّرِيْبٍ ۝٥٤

५५. तथा तिनीहरू र तिनीहरूले पालेका अभिलाषाहरूका बीचमा (ठीक) त्यसरी नै रोक खडा गरिनेछ जसरी तिनीहरूसदृश मानिसहरूसित तिनीहरूभन्दा पहिला गरिएको थियो । तिनीहरू (पनि) व्याकुल तुल्याउने सन्देहले ग्रसित थिए ।

* यसको अर्थ केवल के हो भने पहिला त्यसबाट तिनीहरूले स्वयम्लाई दूर राखेकै कारण दण्डको समयमा तिनीहरूले विश्वास स्थापना (प्राप्त) गर्न सकेनन् ।




## फातिर
(हिजरतअघि अवतरित)

१. परम कृपालु, परम दयाल, अल्लाहको नाममा ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

२. सम्पूर्ण प्रशंसा आकाशमण्डल र पृथ्वीका सिर्जनहार अल्लाहकै निम्ति हो, जसले दुइ-दुइ र तीन-तीन तथा चारचार पक्षयुक्त फरिस्ताहरूलाई सन्देशवाहक-स्वरूप नियुक्त गर्छन् । उनी (आफ्नो) सृष्टिमा जति इच्छा गर्छन् वृद्धि गर्छन्, कारण सम्पूर्ण कुराहरूमाथि अल्लाह पूर्ण सामर्थ्यवान छन् ।

اَلْحَمْدُ لِلّٰهِ فَاطِرِ السَّمٰوٰتِ وَ الْاَرْضِ جَاعِلِ الْمَلٰٓئِكَةِ رُسُلًا اُولِيْٓ اَجْنِحَةٍ مَّثْنٰى وَثُلٰثَ وَرُبٰعَ ۚ يَزِيْدُ فِى الْخَلْقِ مَا يَشَآءُ ۚ اِنَّ اللّٰهَ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ②

३. मानिसहरूका निम्ति अल्लाहले जुन करुणा निर्धारित गर्छन्, त्यसलाई कसैले रोक्न सक्दैन, तथा जुन कुरालाई उनले रोक्छन्, त्यसलाई उनीबाहेक अन्य कसैले फुकुवा गर्न सक्दैन, तथा उनी परम पराक्रमी, परम तत्वज्ञ छन् ।

مَا يَفْتَحِ اللّٰهُ لِلنَّاسِ مِنْ رَّحْمَةٍ فَلَا مُمْسِكَ لَهَا ۚ وَمَا يُمْسِكْ ۙ فَلَا مُرْسِلَ لَهٗ مِنْۢ بَعْدِهٖ ۚ وَ هُوَ الْعَزِيْزُ الْحَكِيْمُ ③

४. ए मानिसहरू हो, अल्लाहले तिमीहरूमाथि गरेको अनुग्रहलाई स्मरण गर । के अल्लाहबाहेक कोही यस्तो सृष्टिकर्ता छ जसले आकाशमण्डल र पृथ्वीबाट तिमीहरू- लाई जीविका प्रदान गर्छ? उनीबाहेक अन्य कोही उपासनायोग्य छैन । अत: तिमीहरूलाई कुन दिशातर्फ लगिँदैछ?

يٰٓاَيُّهَا النَّاسُ اذْكُرُوْا نِعْمَتَ اللّٰهِ عَلَيْكُمْ ۚ هَلْ مِنْ خَالِقٍ غَيْرُ اللّٰهِ يَرْزُقُكُمْ مِّنَ السَّمَآءِ وَ الْاَرْضِ ۚ لَآ اِلٰهَ اِلَّا هُوَ ۖ فَاَنّٰى تُؤْفَكُوْنَ ④

५. तथा यदि तिनीहरूले तिमीलाई अस्वीकार गर्छन् भने, तिमीभन्दा पहिलाका अल्लाहका सन्देशवाहकहरूलाई (पनि) अस्वीकार गरिएको छ, तथा (सम्पूर्ण) कुराहरूलाई (निर्णयका निम्ति) अल्लाहका

وَاِنْ يُّكَذِّبُوْكَ فَقَدْ كُذِّبَتْ رُسُلٌ مِّنْ قَبْلِكَ ۚ وَاِلَى اللّٰهِ تُرْجَعُ الْاُمُوْرُ ⑤

जुनाफमा फर्काएर लगिनेछ ।

يَاَيُّهَا النَّاسُ اِنَّ وَعْدَ اللّٰهِ حَقٌّ فَلَا تَغُرَّنَّكُمُ الْحَيٰوةُ الدُّنْيَا ۥ وَ لَا يَغُرَّنَّكُمْ بِاللّٰهِ الْغَرُوْرُ ۝

६. ए मानिसहरू हो, अल्लाहको प्रतिश्रुति (वचन) निश्चयपूर्वक सत्य रहेको छ, त्यसकारण यस सांसारिक जीवनले तिमीहरूलाई धोका नदेओस्, न त कुनै धोकेबाजले अल्लाहका सम्बन्धमा तिमीहरूलाई धोका दिओस् ।

اِنَّ الشَّيْطٰنَ لَكُمْ عَدُوٌّ فَاتَّخِذُوْهُ عَدُوًّا ۥ اِنَّمَا يَدْعُوْا حِزْبَهٗ لِيَكُوْنُوْا مِنْ اَصْحٰبِ السَّعِيْرِ ۝

७. निश्चयपूर्वक शैतान तिमीहरूको एउटा शत्रु हो, अतः त्यसलाई आफ्नो शत्रु मान । उसले आफ्ना दलहरूलाई तिनीहरू प्रज्वलित अग्निका निवासी बनून् भनी बोलाउने गर्छ ।

اَلَّذِيْنَ كَفَرُوْا لَهُمْ عَذَابٌ شَدِيْدٌ ۥ وَ الَّذِيْنَ اٰمَنُوْا وَ عَمِلُوا الصّٰلِحٰتِ لَهُمْ مَّغْفِرَةٌ وَّ اَجْرٌ كَبِيْرٌ ۝

८. जुन व्यक्तिहरू अविश्वासी छन् तिनीहरूका निम्ति कठोर दण्ड रहेको छ । तथा जुन व्यक्तिहरू विश्वास गर्छन् र पुण्यकार्य गर्छन् तिनीहरूका निम्ति क्षमादान तथा एउटा महान प्रतिदान रहेको छ ।

اَفَمَنْ زُيِّنَ لَهٗ سُوْٓءُ عَمَلِهٖ فَرَاٰهُ حَسَنًا ۥ فَاِنَّ اللّٰهَ يُضِلُّ مَنْ يَّشَآءُ وَ يَهْدِيْ مَنْ يَّشَآءُ ۖ فَلَا تَذْهَبْ نَفْسُكَ عَلَيْهِمْ حَسَرٰتٍ ۥ اِنَّ اللّٰهَ عَلِيْمٌۢ بِمَا يَصْنَعُوْنَ ۝

९. जसलाई उसका कार्यहरू उत्तम तुल्याएर देखाइएको छ, अतः उसले तिनीहरूलाई उत्तम ठान्छ के त्यो व्यक्ति (एउटा विश्वासी र वास्तवमै पुण्यकार्य गर्ने व्यक्तिसरह) हुन सक्छ र? निश्चय नै, अल्लाहले जसलाई इच्छा गर्छन् उसलाई पथभ्रष्ट तुल्याउँछन्, तथा जसलाई इच्छा गर्छन् सन्मार्ग देखाउँछन् । त्यसकारण तिनीहरूको शोकमा तिम्रो आत्माको विनाश नहोस् । तिनीहरूका कार्यहरूलाई अल्लाहले राम्ररी जान्दछन् ।

وَ اللّٰهُ الَّذِيْٓ اَرْسَلَ الرِّيٰحَ فَتُثِيْرُ سَحَابًا فَسُقْنٰهُ اِلٰى بَلَدٍ مَّيِّتٍ فَاَحْيَيْنَا بِهِ الْاَرْضَ بَعْدَ مَوْتِهَا ۥ كَذٰلِكَ النُّشُوْرُ ۝

१०. तथा ती अल्लाह नै हुन्, जसले यस्ता हावा पठाउँछन् जसले बादल लिएर हिँड्छन्, तब तिनीहरूलाई हामी एउटा मृत भूखण्डतर्फ डोऱ्याएर लैजाने गर्छौं, तथा त्यसद्वारा पृथ्वीलाई त्यसको मृत्युपश्चात् जीवित गर्छौं । यसै प्रकार

पुनरुत्थान (हुनेछ)

११. जो कोही सम्मान चाहन्छ, त्यसलाई के ज्ञात रहोस् भने सम्पूर्ण सम्मान अल्लाहकै निम्ति रहेको छ । उत्तम कुराहरूको उत्थान उनीतर्फै हुने गर्छ, तथा पुण्यकार्यहरूले तिनीहरूको उत्थानमा सहयोग पुऱ्याउँछन् । तथा जसले कुमन्त्रणा गर्छन्– तिनीहरूका निम्त कठोर दण्ड निर्धारित छ, तथा यस्ता व्यक्तिहरूको मन्त्रणा व्यर्थ जानेछ ।

مَنْ كَانَ يُرِيْدُ الْعِزَّةَ فَلِلّٰهِ الْعِزَّةُ جَمِيْعًا ؕ اِلَيْهِ يَصْعَدُ الْكَلِمُ الطَّيِّبُ وَالْعَمَلُ الصَّالِحُ يَرْفَعُهٗ ؕ وَالَّذِيْنَ يَمْكُرُوْنَ السَّيِّاٰتِ لَهُمْ عَذَابٌ شَدِيْدٌ ؕ وَمَكْرُ اُولٰٓئِكَ هُوَ يَبُوْرُ ﴿۱۱﴾

१२. तथा अल्लाहले तिमीहरूलाई धुलो माटोबाट सिर्जना गरे, त्यसपछि एउटा वीर्यको थोपाबाट, त्यसपछि उनले तिमीहरूलाई जोडीजोडी बनाए । तथा उनलाई थाहा नभै न कुनै महिलाले गर्भधारण गर्छे, न बालकलाई जन्म दिन्छे परन्तु उनलाई त्यसको पूर्णज्ञान रहन्छ । तथा न कुनै लामो उमेरको व्यक्तिको उमेरलाई बढाइन्छ न त उसको जीवनको कुनै अंश घटाइन्छ, परन्तु त्यसबारे एउटा पुस्तकमा (लिपिबद्ध रहेको छ) त्यो कार्य निश्चय नै अल्लाहका निम्ति अति सरल रहेको छ ।

وَاللّٰهُ خَلَقَكُمْ مِّنْ تُرَابٍ ثُمَّ مِنْ نُّطْفَةٍ ثُمَّ جَعَلَكُمْ اَزْوَاجًا ؕ وَمَا تَحْمِلُ مِنْ اُنْثٰى وَلَا تَضَعُ اِلَّا بِعِلْمِهٖ ؕ وَمَا يُعَمَّرُ مِنْ مُّعَمَّرٍ وَّلَا يُنْقَصُ مِنْ عُمُرِهٖٓ اِلَّا فِيْ كِتٰبٍ ؕ اِنَّ ذٰلِكَ عَلَى اللّٰهِ يَسِيْرٌ ﴿۱۲﴾

१३. तथा यस्ता दुईवटा समुद्रहरू एक समान हुन सक्दैनन्, जसमध्ये एउटाचाहिँ स्वादिष्ट, मीठो - तथा) पिउन स्वादिलो छ भने, अर्को चाहिँ नुनिलो (तथा) तितो । तथा हरेकबाट तिमीहरू ताजा मासु खाने गर्छौ, तथा तिमीहरू पहिरनका निम्ति अलंकारहरू त्यहाँबाट प्राप्त गर्छौ । तथा जहाजहरूलाई त्यहाँ (लहरहरूलाई) चिर्दै हिँडेको तिमी देख्छौ ताकि तिमीहरू उनको कृपाप्राप्तिको प्रयत्न गर, तथा तिमीहरू उनका कृतज्ञ बन

وَمَا يَسْتَوِى الْبَحْرٰنِ ۖ هٰذَا عَذْبٌ فُرَاتٌ سَآئِغٌ شَرَابُهٗ وَهٰذَا مِلْحٌ اُجَاجٌ ؕ وَمِنْ كُلٍّ تَاْكُلُوْنَ لَحْمًا طَرِيًّا وَّتَسْتَخْرِجُوْنَ حِلْيَةً تَلْبَسُوْنَهَا ۚ وَتَرَى الْفُلْكَ فِيْهِ مَوَاخِرَ لِتَبْتَغُوْا مِنْ فَضْلِهٖ وَلَعَلَّكُمْ تَشْكُرُوْنَ ﴿۱۳﴾

१४. उनी रात्रिलाई दिनमा तथा दिनलाई

يُوْلِجُ الَّيْلَ فِى النَّهَارِ وَيُوْلِجُ

النَّهَارَ فِي الَّيْلِ ، وَ سَخَّرَ الشَّمْسَ وَالْقَمَرَ ﷺ كُلٌّ يَّجْرِيْ لِأَجَلٍ مُّسَمًّى ، ذٰلِكُمُ اللّٰهُ رَبُّكُمْ لَهُ الْمُلْكُ ، وَالَّذِيْنَ تَدْعُوْنَ مِنْ دُوْنِهٖ مَا يَمْلِكُوْنَ مِنْ قِطْمِيْرٍ ﴿١٣﴾

रात्रिमा प्रवेश गर्छन् । तथा उनले सूर्य र चन्द्रमालाई सेवामा खटाएका छन्, तिनीहरूमध्ये प्रत्येक निर्धारित म्यादसम्मका निम्ति गतिशील छन् । तिमीहरूका प्रभु, अल्लाह यस्ता छन्, साम्राज्य उनकै रहेको छ । तथा अल्लाहलाई छाडी जसलाई तिमीहरू पुकार्छौ तिनीहरू एउटा कण समेतका पनि अधिकारी रहेका छैनन् ।

اِنْ تَدْعُوْهُمْ لَا يَسْمَعُوْا دُعَآءَكُمْ ، وَلَوْ سَمِعُوْا مَا اسْتَجَابُوْا لَكُمْ ، وَيَوْمَ الْقِيٰمَةِ يَكْفُرُوْنَ بِشِرْكِكُمْ ، وَلَا يُنَبِّئُكَ مِثْلُ خَبِيْرٍ ﴿١٤﴾

१४. यदि तिमीहरूले तिनीहरूलाई पुकारेमा, तिनीहरूले तिमीहरूको पुकार सुन्नेछैनन्, तथा यदि तिनीहरूले त्यसलाई सुनिहाले भने पनि तिमीहरूलाई (त्यसको) उत्तर दिन सक्नेछैनन् । तथा पुनरुत्थानका दिन तिमीहरूले - तिनीहरूलाई अल्लाहका) भागीदार तुल्याउने गरेको कुरालाई तिनीहरूले अस्वीकार गर्नेछन् । तथा (उनै) सर्वज्ञाताबाहेक कसैले तिमीलाई यसरी अवगत गराउन सक्दैन ।

يٰٓاَيُّهَا النَّاسُ اَنْتُمُ الْفُقَرَآءُ اِلَى اللّٰهِ ، وَاللّٰهُ هُوَ الْغَنِيُّ الْحَمِيْدُ ﴿١٥﴾

१५. ए मानिसहरू हो ! तिमीहरूलाई अल्लाहको नितान्त आवश्यकता (खाँचो) रहेको छ, परन्तु अल्लाह यस्ता छन् जसलाई कसैको आवश्यकता छैन, उनी परम प्रशंसनीय छन् ।

اِنْ يَّشَاْ يُذْهِبْكُمْ وَ يَاْتِ بِخَلْقٍ جَدِيْدٍ ﴿١٦﴾

१६. यदि उनले चाहेमा, तिमीहरूलाई उनले विनाश गर्न सक्छन्, तथा (त्यस स्थानमा) एउटा नयाँ सृष्टिको सिर्जना गर्न सक्छन् ।

وَمَا ذٰلِكَ عَلَى اللّٰهِ بِعَزِيْزٍ ﴿١٧﴾

१७. तथा त्यो कार्य अल्लाहका निम्ति कठिन छैन ।

وَلَا تَزِرُ وَازِرَةٌ وِّزْرَ اُخْرٰى ، وَاِنْ تَدْعُ مُثْقَلَةٌ اِلٰى حِمْلِهَا لَا يُحْمَلْ مِنْهُ شَيْءٌ وَّلَوْ كَانَ ذَا قُرْبٰى ، اِنَّمَا تُنْذِرُ

१८. तथा कुनै भार उठाउने (ज्यान)ले अर्काको भार उठाउन सक्नेछैन, तथा यदि कुनै ठूलो भारले दबेको (ज्यान)ले आफ्नो भार (उठाउन) का निम्ति अर्कालाई बोलाएमा (अर्कोद्वारा) त्यसको लेशमात्र

الَّذِيْنَ يَخْشَوْنَ رَبَّهُمْ بِالْغَيْبِ وَ اَقَامُوا الصَّلٰوةَ ۗ وَمَنْ تَزَكّٰى فَاِنَّمَا يَتَزَكّٰى لِنَفْسِهٖ ۗ وَاِلَى اللّٰهِ الْمَصِيْرُ ⑱

पनि भार उठाइने छैन, चाहे त्यो एउटा निकटसम्बन्धी नै किन नहोस् । तिमीले केवल ती व्यक्तिहरूलाई सावधान गर्न सक्छौ जुन व्यक्तिहरू गुप्तरूपमा आफ्ना प्रभुसित डराउँछन् तथा नमाज अनुष्ठान गर्छन् । तथा जसले स्वयम्लाई पवित्र तुल्याउँछ, त्यसले केवल आफ्नै उन्नतिका निम्ति स्वयम्लाई पवित्र तुल्याउँछ, तथा अल्लाहतर्फ नै (सबैले) फर्केर जानु छ ।

وَمَا يَسْتَوِى الْاَعْمٰى وَالْبَصِيْرُ ⑲

२०. तथा अन्धा र दृष्टियुक्त व्यक्तिहरू बराबर हुन सक्दैनन्,

وَلَا الظُّلُمٰتُ وَلَا النُّوْرُ ⑳

२१. न त अन्धकार र प्रकाश नै,

وَلَا الظِّلُّ وَلَا الْحَرُوْرُ ㉑

२२. न छायाँ र घाम (बराबर हुन सक्छन्)

وَمَا يَسْتَوِى الْاَحْيَآءُ وَلَا الْاَمْوَاتُ ۗ اِنَّ اللّٰهَ يُسْمِعُ مَنْ يَّشَآءُ ۚ وَمَآ اَنْتَ بِمُسْمِعٍ مَّنْ فِى الْقُبُوْرِ ㉒

२३. न त जीवित र मृत एकसमान हुन सक्छन् । अल्लाहले जसलाई इच्छा गर्छन् त्यसलाई सुनाउँछन्, तथा चिहानमा रहेका (व्यक्ति)हरूलाई तिमी कदापि सुनाउन सक्दैनौ ।

اِنْ اَنْتَ اِلَّا نَذِيْرٌ ㉓

२४. तिमी ता केवल एकजना सावधानकर्ता हौ ।

اِنَّآ اَرْسَلْنٰكَ بِالْحَقِّ بَشِيْرًا وَّنَذِيْرًا ۗ وَاِنْ مِّنْ اُمَّةٍ اِلَّا خَلَا فِيْهَا نَذِيْرٌ ㉔

२५. वस्तुतः हामीले तिमीलाई सत्यका साथ एकजना शुभसन्देशवाहक तथा सतर्ककारीस्वरूप पठाएका छौं, तथा कुनै जाति(का मानिसहरू) यस्ता छैनन् जसतर्फ सतर्ककारी पठाइएको नहोस् ।

وَاِنْ يُّكَذِّبُوْكَ فَقَدْ كَذَّبَ الَّذِيْنَ مِنْ قَبْلِهِمْ ۚ جَآءَتْهُمْ رُسُلُهُمْ بِالْبَيِّنٰتِ وَبِالزُّبُرِ وَبِالْكِتٰبِ الْمُنِيْرِ ㉕

२६. तथा यदि तिनीहरूले तिमीसित मिथ्यावादीसरह व्यवहार गरेमा, तिनीहरूभन्दा पहिलाका व्यक्तिहरूले पनि आफ्ना नबीहरूसित मिथ्यावादीहरूसरह व्यवहार गरेका थिए । तिनीहरूका सन्देशवाहकहरू तिनीहरूसमक्ष स्पष्ट चिह्नहरू तथा धर्मपुस्तिकाहरू र

प्रकाशमय पुस्तक लिएर आएका थिए ।

२७. त्यसपछि मैले ती अविश्वासी व्यक्तिहरूलाई समातें तथा मैले (ल्याएको) त्यो परिवर्तन कस्तो डरलाग्दो थियो त !

ثُمَّ أَخَذْتُ الَّذِيْنَ كَفَرُوْا فَكَيْفَ كَانَ نَكِيْرِ ﴿٢٦﴾

२८. अल्लाहले आकाशबाट पानी बर्साउँछन् भन्ने कुरा तिमीले देखेका छैनौ र? तथा त्यसबाट हामी विभिन्न रङ्गका फलहरू उत्पन्न गर्छौं, तथा पर्वतहरूका धर्काहरू पनि सेता र राता तथा अन्य गहिरा काला विभिन्न रङ्गका हुने गर्छन्,

أَلَمْ تَرَ أَنَّ اللّٰهَ أَنْزَلَ مِنَ السَّمَآءِ مَآءً فَأَخْرَجْنَا بِهٖ ثَمَرٰتٍ مُّخْتَلِفًا أَلْوَانُهَا وَمِنَ الْجِبَالِ جُدَدٌ بِيْضٌ وَّحُمْرٌ مُّخْتَلِفٌ أَلْوَانُهَا وَغَرَابِيْبُ سُوْدٌ ﴿٢٧﴾

२९. तथा मानिसहरू र पशुहरू तथा जनावरहरूमा पनि यसै प्रकार भिन्नभिन्न प्रकारका रङ्गहरू हुन्छन्? उनका सेवक (भृत्य) हरूमध्ये केवल ज्ञानवान व्यक्तिहरू अल्लाहसित डराउँछन् । वस्तुतः अल्लाह परम पराक्रमी, परम क्षमाशील छन् ।

وَمِنَ النَّاسِ وَالدَّوَآبِّ وَالْأَنْعَامِ مُخْتَلِفٌ أَلْوَانُهٗ كَذٰلِكَ ۚ إِنَّمَا يَخْشَى اللّٰهَ مِنْ عِبَادِهِ الْعُلَمٰٓؤُا ۚ إِنَّ اللّٰهَ عَزِيْزٌ غَفُوْرٌ ﴿٢٨﴾

३०. जुन व्यक्तिहरूले अल्लाहको पुस्तकको (अध्ययन) अनुसरण गर्छन् तथा नमाज अनुष्ठान गर्छन् र हामीले तिनीहरूलाई प्रदान गरेका वस्तुहरूबाट गुप्तरूपमा र (प्रकाश्यरूपमा अल्लाहको मार्गमा) खर्च गर्छन्, निश्चयपूर्वक (केवल) तिनीहरू नै यस्ता व्यक्तिहरू हुन् जो कहिल्यै विनाश नहुने व्यापारको आशा राख्छन्,

إِنَّ الَّذِيْنَ يَتْلُوْنَ كِتٰبَ اللّٰهِ وَأَقَامُوا الصَّلٰوةَ وَأَنْفَقُوْا مِمَّا رَزَقْنٰهُمْ سِرًّا وَّعَلَانِيَةً يَّرْجُوْنَ تِجَارَةً لَّنْ تَبُوْرَ ﴿٢٩﴾

३१. यसको फलस्वरूप उनले तिनीहरूलाई तिनीहरूको पूरा पूरा प्रतिदानका साथ आफ्नो कृपाबाट (अझ) बढाएर प्रदान गर्नेछन् । उनी निश्चय नै परम क्षमाशील, परम गुणग्राही छन् ।

لِيُوَفِّيَهُمْ أُجُوْرَهُمْ وَيَزِيْدَهُمْ مِّنْ فَضْلِهٖ ۚ إِنَّهٗ غَفُوْرٌ شَكُوْرٌ ﴿٣٠﴾

३२. तथा जुन पुस्तक हामीले तिमीप्रति अवतीर्ण गरेका छौं त्यो (स्वयम्) सत्य छ भने त्यसभन्दाअघिका (भविश्यवाणी) हरूलाई समेत पूर्ण गर्छ । अल्लाह आफ्ना

وَالَّذِيْٓ أَوْحَيْنَآ إِلَيْكَ مِنَ الْكِتٰبِ هُوَ الْحَقُّ مُصَدِّقًا لِّمَا بَيْنَ

يَدَيْهِ ۚ إِنَّ اللَّهَ بِعِبَادِهِ لَخَبِيرٌ بَصِيرٌ ﴿٣٢﴾

भृत्यहरूका अवस्थाका परिज्ञाता, सर्वद्रष्टा छन् ।

ثُمَّ أَوْرَثْنَا الْكِتَابَ الَّذِينَ اصْطَفَيْنَا مِنْ عِبَادِنَا ۖ فَمِنْهُمْ ظَالِمٌ لِنَفْسِهِ ۖ وَمِنْهُمْ مُقْتَصِدٌ ۖ وَمِنْهُمْ سَابِقٌ بِالْخَيْرَاتِ بِإِذْنِ اللَّهِ ۚ ذَٰلِكَ هُوَ الْفَضْلُ الْكَبِيرُ ﴿٣٣﴾

३३. त्यसपछि हामीले त्यो पुस्तक हाम्रा निर्वाचित सेवकहरूलाई उत्तराधिकार स्वरूप प्रदान गऱ्यौं तिनीहरूमध्ये (केहीले आफ्ना अभिलाषाहरू दबाएर) स्वयम्माथि अत्याचार गर्ने गर्छन् भने, अन्य केहीचाहिँ मध्यमार्गी छन्, तथा तिनीहरूमध्ये केही सेवकहरू भने अल्लाहको आज्ञानुसार पुण्यकार्य गर्नमा (अन्य व्यक्तिहरूभन्दा) अघि रहन्छन् । तथा यही नै वस्तुत: अल्लाहको ठूलो कृपा रहेको छ ।

جَنَّاتُ عَدْنٍ يَدْخُلُونَهَا يُحَلَّوْنَ فِيهَا مِنْ أَسَاوِرَ مِنْ ذَهَبٍ وَلُؤْلُؤًا ۖ وَلِبَاسُهُمْ فِيهَا حَرِيرٌ ﴿٣٤﴾

३४. सदा रहने बगैंचाहरू जसमा तिनीहरू दाखिल हुनेछन् । त्यहाँ तिनीहरूलाई सुनका चुराहरू र मोती पहिराइने छ, तथा तिनीहरूका वस्त्रहरू त्यहाँ रेशमका हुनेछन्

وَقَالُوا الْحَمْدُ لِلَّهِ الَّذِي أَذْهَبَ عَنَّا الْحَزَنَ ۖ إِنَّ رَبَّنَا لَغَفُورٌ شَكُورٌ ﴿٣٥﴾

३५. तथा तिनीहरूले भन्नेछन्, 'सम्पूर्ण प्रशंसा' उनै अल्लाहका निम्ति जसले हाम्रो शोक निवारण गरेका छन् । हाम्रा प्रतिपालकनिश्चय नै परम क्षमाशील, परम गुणग्राही छन्,

الَّذِي أَحَلَّنَا دَارَ الْمُقَامَةِ مِنْ فَضْلِهِ لَا يَمَسُّنَا فِيهَا نَصَبٌ وَلَا يَمَسُّنَا فِيهَا لُغُوبٌ ﴿٣٦﴾

३६. "जसले आफ्नो कृपाद्वारा हामीलाई यस्तो चिरस्थायी वास प्रदान गरेका छन्, जहाँ हामीलाई न दु:ख कष्टले छुनेछ, न त त्यहाँ हामीलाई थकाइ (को अनुभव) हुनेछ ।"

وَالَّذِينَ كَفَرُوا لَهُمْ نَارُ جَهَنَّمَ لَا يُقْضَىٰ عَلَيْهِمْ فَيَمُوتُوا وَلَا يُخَفَّفُ عَنْهُمْ مِنْ عَذَابِهَا ۚ كَذَٰلِكَ نَجْزِي كُلَّ كَفُورٍ ﴿٣٧﴾

३७. परन्तु ती अविश्वासी व्यक्तिहरूलाई (भने) नर्कको अग्नि मिल्नेछ । तिनीहरू मरुन् भनी तिनीहरूका निम्ति मृत्युको निर्णय नै गरिनेछैन; न त तिनीहरूका निम्ति त्यहाँको दण्ड घटाइने छ । हरेक कृतघ्न व्यक्तिलाई हामी यस्तै बदला दिने गर्छौं ।

وَهُمْ يَصْطَرِخُوْنَ فِيْهَا ۚ رَبَّنَآ اَخْرِجْنَا نَعْمَلْ صَالِحًا غَيْرَ الَّذِيْ كُنَّا نَعْمَلُ ؕ اَوَلَمْ نُعَمِّرْكُمْ مَّا يَتَذَكَّرُ فِيْهِ مَنْ تَذَكَّرَ وَجَآءَكُمُ النَّذِيْرُ ؕ فَذُوْقُوْا فَمَا لِلظّٰلِمِيْنَ مِنْ نَّصِيْرٍ ﴿٣٧﴾

३८. तथा तिनीहरू त्यहाँ सहयोग प्राप्तिका निम्ति चिच्च्याउने छन्, "हे हाम्रा प्रभु, हामीलाई बाहिर निकाल, हामीले गर्ने गरेका कार्यहरू विपरीत हामी पुण्यकार्य गर्नेछौं ।" के हामीले तिमीहरूलाई त्यतिको लामो उमेर दिएका थिएनौं र जसमा एउटा अर्ती लिन चाहने व्यक्तिले अर्ती लिन सक्थ्यो? तथा तिमीहरू समक्ष एकजना सतर्ककारी (पनि) आएका थिए । अतः तिमीहरू अब (दण्ड) चाख; किनभने अत्याचारीहरूको कोही सहयोगी हुँदैन ।"

اِنَّ اللّٰهَ عٰلِمُ غَيْبِ السَّمٰوٰتِ وَالْاَرْضِ ؕ اِنَّهٗ عَلِيْمٌۢ بِذَاتِ الصُّدُوْرِ ﴿٣٨﴾

३९. अल्लाहले वस्तुतः आकाशमण्डल र पृथ्वीका गुप्त भेदहरू जान्दछन् । छातीभित्र (गुप्त रहेका) सम्पूर्ण कुराहरूलाई उनले राम्ररी जान्दछन् ।

هُوَ الَّذِيْ جَعَلَكُمْ خَلٰٓئِفَ فِي الْاَرْضِ ؕ فَمَنْ كَفَرَ فَعَلَيْهِ كُفْرُهٗ ؕ وَلَا يَزِيْدُ الْكٰفِرِيْنَ كُفْرُهُمْ عِنْدَ رَبِّهِمْ اِلَّا مَقْتًا ۚ وَلَا يَزِيْدُ الْكٰفِرِيْنَ كُفْرُهُمْ اِلَّا خَسَارًا ﴿٣٩﴾

४०. ती उनी नै हुन्, जसले तिमीहरूलाई पृथ्वीमा उत्तराधिकारीस्वरूप स्थापन गरे । अतः जसले अविश्वास गर्छ, त्यसले आफ्नो अविश्वासको परिणामस्वरूप आफैं दुःख उठाउने छ । अविश्वासीहरूका निम्ति तिनीहरूको अविश्वासले तिनीहरूका प्रभुका दृष्टिमा केवल द्वेष बढाउनेछ, तथा अविश्वासीहरूलाई तनीहरूको अविश्वासले केवल घाटाग्रस्त तुल्याउनेछ ।

قُلْ اَرَءَيْتُمْ شُرَكَآءَكُمُ الَّذِيْنَ تَدْعُوْنَ مِنْ دُوْنِ اللّٰهِ ؕ اَرُوْنِيْ مَاذَا خَلَقُوْا مِنَ الْاَرْضِ اَمْ لَهُمْ شِرْكٌ فِي السَّمٰوٰتِ ۚ اَمْ اٰتَيْنٰهُمْ كِتٰبًا فَهُمْ عَلٰى بَيِّنَتٍ مِّنْهُ ۚ بَلْ اِنْ يَّعِدُ الظّٰلِمُوْنَ بَعْضُهُمْ بَعْضًا اِلَّا غُرُوْرًا ﴿٤٠﴾

४१. तिमी भन, "अल्लाहलाई छाडी जसलाई तिमीहरू पुकार्छौ तिमीहरूका ती भागीदार उपास्यहरूबारे तिमीहरूलाई केही थाहा छ? अतः पृथ्वीमा तिनीहरूले जुन वस्तुहरू सृष्टि गरेका छन् (ती वस्तुहरू) मलाई देखाऊ । अथवा के आकाशमण्डलको सिर्जनामा तिनीहरूको कुनै सहभागिता रहेको छ? अथवा हामीले तिनीहरूलाई कुनै यस्तो पुस्तक प्रदान गरेका छौ जसबाट तिनीहरूलाई कुनै प्रमाण प्राप्त भएको होस्?" होइन, अपितु अत्याचारीहरू परस्पर एक- अर्कासित केवल

धोकायुक्त प्रणहरू गर्ने गर्छन् ।

४२. निश्चय नै, अल्लाहले नै आकाशमण्डल र पृथ्वीलाई तिनीहरू (आ-आफ्ना स्थानबाट) नहटून् भनी समातेर राखेका छन् । तथा यदि तिनीहरू हटेमा उनीबाहेक अन्य कसैले तिनीहरूलाई रोक्न सक्नेछैन । वस्तुतः उनी परम सहनशील, परम क्षमाशील छन् ।

إِنَّ ٱللَّهَ يُمْسِكُ ٱلسَّمَٰوَٰتِ وَٱلْأَرْضَ أَن تَزُولَا ۚ وَلَئِن زَالَتَآ إِنْ أَمْسَكَهُمَا مِنْ أَحَدٍ مِّنۢ بَعْدِهِۦٓ ۚ إِنَّهُۥ كَانَ حَلِيمًا غَفُورًا ﴿٤١﴾

४३. तथा यदि कुनै सतर्ककारी तिनीहरूतर्फ आएका भए अन्य सबै मानिसहरूभन्दा उत्तम तरिकाले तिनीहरूले मार्गदर्शनको अनुसरण गर्ने थिए भनी तिनीहरूले अल्लाहको नाममा दृढ शपथ खाएका थिए । परन्तु जब एकजना सतर्ककारी तिनीहरू समक्ष आए, तिनको आगमनले तिनीहरूलाई केवल घृणामा अघि बढायो,

وَأَقْسَمُوا۟ بِٱللَّهِ جَهْدَ أَيْمَٰنِهِمْ لَئِن جَآءَهُمْ نَذِيرٌ لَّيَكُونُنَّ أَهْدَىٰ مِنْ إِحْدَى ٱلْأُمَمِ ۖ فَلَمَّا جَآءَهُمْ نَذِيرٌ مَّا زَادَهُمْ إِلَّا نُفُورًا ﴿٤٢﴾

४४. पृथ्वीमा अभिमान गर्नाले र कु-मन्त्रणा गर्नाले । परन्तु कु-मन्त्रणाले त्यसका निर्माणकारीहरूलाई नै विनाश गर्छ । अतः के तिनीहरू अतीतका जातिहरूमा (अल्लाहको) जुन (व्यवहारको) तरिका थियो केवल त्यसैको प्रतीक्षामा छन् त? परन्तु अल्लाहको तरिकामा तिमी कदापि परिवर्तन पाउनेछैनौ; न त अल्लाहको तरिकामा कहिल्यै तिमीले तलमाथि भएको पाउनेछौ ।

ٱسْتِكْبَارًا فِى ٱلْأَرْضِ وَمَكْرَ ٱلسَّيِّئِ ۚ وَلَا يَحِيقُ ٱلْمَكْرُ ٱلسَّيِّئُ إِلَّا بِأَهْلِهِۦ ۚ فَهَلْ يَنظُرُونَ إِلَّا سُنَّتَ ٱلْأَوَّلِينَ ۚ فَلَن تَجِدَ لِسُنَّتِ ٱللَّهِ تَبْدِيلًا ۖ وَلَن تَجِدَ لِسُنَّتِ ٱللَّهِ تَحْوِيلًا ﴿٤٣﴾

४५. के तिनीहरूले पृथ्वीमा घुमेर फिरेर तिनीहरूभन्दा पहिला रहेका व्यक्तिहरूको अन्त कस्तो नराम्रो भएको थियो भन्ने कुरा देखेका छैनन् र? तथा तिनीहरू ता यिनीहरूभन्दा अधिक शक्तिसम्पन्न थिए । अल्लाह त्यस्ता छैनन् जसको (योजनालाई) आकाशमण्डल अथवा पृथ्वीमा कसैले असफल तुल्याउन सकोस्; वस्तुतः, उनी

أَوَلَمْ يَسِيرُوا۟ فِى ٱلْأَرْضِ فَيَنظُرُوا۟ كَيْفَ كَانَ عَٰقِبَةُ ٱلَّذِينَ مِن قَبْلِهِمْ وَكَانُوٓا۟ أَشَدَّ مِنْهُمْ قُوَّةً ۚ وَمَا كَانَ ٱللَّهُ لِيُعْجِزَهُۥ مِن شَىْءٍ فِى ٱلسَّمَٰوَٰتِ وَلَا فِى ٱلْأَرْضِ ۚ إِنَّهُۥ كَانَ عَلِيمًا قَدِيرًا ﴿٤٤﴾

सर्वज्ञ, सर्व-शक्तिमान छन् ।

४६. तथा यदि मानिसहरूलाई तिनीहरूका क्रियाकलापका कारण अल्लाहले तत्कालै दण्डित तुल्याइहाल्थे भने (पृथ्वीको) सतहमा एउटै जीवित प्राणीलाई छाड्ने थिएनन्; परन्तु एउटा निर्धारित समयसम्मका निम्ति तिनीहरूलाई उनले अवसर प्रदान गर्छन्; तथा जब तिनीहरूको निर्धारित समय आउँछ, (सावधान) अल्लाह आफ्ना भृत्य (मानवजाति) हरूबारे पूर्ण अवगत छन् ।

وَلَوْ يُؤَاخِذُ اللَّهُ النَّاسَ بِمَا كَسَبُوا مَا تَرَكَ عَلَىٰ ظَهْرِهَا مِن دَابَّةٍ وَلَٰكِن يُؤَخِّرُهُمْ إِلَىٰ أَجَلٍ مُّسَمًّى ۖ فَإِذَا جَاءَ أَجَلُهُمْ فَإِنَّ اللَّهَ كَانَ بِعِبَادِهِ بَصِيرًا ﴿٤٥﴾

سُوْرَةُ يٰسٓ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ اَرْبَعٌ وَّثَمَانُوْنَ اٰيَةً وَّخَمْسَةُ رُكُوْعَاتٍ

## या सीन

(हिजरतअघि अवतरित)

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ﴿١﴾

२. या सिन* ।

يٰسٓ ﴿٢﴾

३. तत्वज्ञान (ले परि)पूर्ण कुरानको शपथ,

وَالْقُرْاٰنِ الْحَكِيْمِ ﴿٣﴾

४. तिमी निःस्सन्देह सन्देशवाहकहरू मध्येका (एकजना) सन्देशवाहक हौ,

اِنَّكَ لَمِنَ الْمُرْسَلِيْنَ ﴿٤﴾

५. सन्मार्गगामी (हौ) ।

عَلٰى صِرَاطٍ مُّسْتَقِيْمٍ ﴿٥﴾

६. (यो) परम पराक्रमी, परम करुणाशीलको आकाशवाणी (हो),

تَنْزِيْلَ الْعَزِيْزِ الرَّحِيْمِ ﴿٦﴾

७. ताकि तिमी यस्तो जातिलाई सतर्क गर जसका पुर्खाहरूलाई सतर्क गरिएको थिएन, फलस्वरुप तिनीहरू अचैतन्य थिए ।

لِتُنْذِرَ قَوْمًا مَّآ اُنْذِرَ اٰبَآؤُهُمْ فَهُمْ غٰفِلُوْنَ ﴿٧﴾

८. निश्चय नै तिनीहरूमध्ये अधिकतर व्यक्तिहरूका बारेमा वचन सत्य सावित भयो, अतः तिनीहरूले विश्वास गर्दैनन् ।

لَقَدْ حَقَّ الْقَوْلُ عَلٰٓى اَكْثَرِهِمْ فَهُمْ لَا يُؤْمِنُوْنَ ﴿٨﴾

९. हामीले तिनीहरूका गर्धनमा च्यापुसम्म पुग्ने कण्ठाहरू बेरेका छौं, फलस्वरूप तिनीहरूका शिरहरू ठाडा रहन बाध्य छन् ।

اِنَّا جَعَلْنَا فِيْٓ اَعْنَاقِهِمْ اَغْلٰلًا فَهِيَ اِلَى الْاَذْقَانِ فَهُمْ مُّقْمَحُوْنَ ﴿٩﴾

१०. तथा तिनीहरूका अघिल्तिर र तिनीहरूका पछिल्तिर हामीले एउटा रोक खडा गरेका छौं, तथा तिनीहरूलाई ढाकिदिएका छौं, फलस्वरुप तिनीहरू देख्न सक्दैनन् ।

وَجَعَلْنَا مِنْۢ بَيْنِ اَيْدِيْهِمْ سَدًّا وَّمِنْ خَلْفِهِمْ سَدًّا فَاَغْشَيْنٰهُمْ فَهُمْ لَا يُبْصِرُوْنَ ﴿١٠﴾

११. तथा तिनीहरूलाई तिमीले सतर्क गर्नु अथवा नगर्नु एकै समान रहेको छः

وَسَوَآءٌ عَلَيْهِمْ ءَاَنْذَرْتَهُمْ اَمْ لَمْ تُنْذِرْهُمْ لَا يُؤْمِنُوْنَ ﴿١١﴾

---

* हे श्रेष्ठ सरदार (नायक) ।

तिनीहरूले विश्वास गर्नेछैनन् ।

१२. जसले यस स्मारिकाको अनुसरण गर्छ र एकान्तमा परम कृपालु (अल्लाह) सित डराउँछ, तिमीले केवल त्यसलाई सावधान गर्न सक्छौ । अतः त्यस्तो व्यक्तिलाई क्षमादान र महान प्रतिदान (प्राप्ति)को शुभसन्देश देउ ।

إِنَّمَا تُنْذِرُ مَنِ اتَّبَعَ الذِّكْرَ وَ خَشِيَ الرَّحْمٰنَ بِالْغَيْبِ ۚ فَبَشِّرْهُ بِمَغْفِرَةٍ وَّ اَجْرٍ كَرِيْمٍ ﴿١١﴾

१३. निश्चयपूर्वक, हामी नै मृतलाई जीवन प्रदान गर्छौं, तथा जुन कुरा तिनीहरू (आफूभन्दा) अघि पठाउँछन् र जुन कुरा पछि छाड्छन् ती सबैलाई हामी (लिपिवद्ध) राख्छौं; तथा सम्पूर्ण वस्तुहरूलाई हामीले एउटा स्पष्ट पुस्तकमा लिपिवद्ध राखेका छौं

اِنَّا نَحْنُ نُحْيِ الْمَوْتٰى وَ نَكْتُبُ مَا قَدَّمُوْا وَ اٰثَارَهُمْ ۚ وَ كُلَّ شَيْءٍ اَحْصَيْنٰهُ فِيْٓ اِمَامٍ مُّبِيْنٍ ﴿١٢﴾

१४. तथा तिनीहरूलाई एउटा नगरका बासिन्दाहरूको घटना सुनाउ, जब त्यहाँ सन्देशवाहकहरू आएका थिए ।

وَاضْرِبْ لَهُمْ مَّثَلًا اَصْحٰبَ الْقَرْيَةِ ۘ اِذْ جَآءَهَا الْمُرْسَلُوْنَ ﴿١٣﴾

१५. जब हामीले तिनीहरूसमक्ष दुइजना सन्देशवाहक पठायौं, र तिनीहरूले ती दुबैलाई अस्वीकार गरे; अतः हामीले तेस्रो (सन्देशवाहक) पठाएर (तिनीहरूलाई) सुदृढ तुल्यायौं, तथा तिनीहरूले भने, "वस्तुतः हामीलाई तिमीहरूतर्फ सन्देशवाहकस्वरूप पठाइएको हो ।"

اِذْ اَرْسَلْنَآ اِلَيْهِمُ اثْنَيْنِ فَكَذَّبُوْهُمَا فَعَزَّزْنَا بِثَالِثٍ فَقَالُوْٓا اِنَّآ اِلَيْكُمْ مُّرْسَلُوْنَ ﴿١٤﴾

१६. तिनीहरूले उत्तर दिए, "तिमीहरू ता हामी जस्तै मानिस हौ र परम कृपालु (अल्लाह) ले कुनै कुरो अवतीर्ण गरेका छैनन् । तिमीहरू केवल मिथ्या कुरा गरिरहेछौ ।"

قَالُوْا مَآ اَنْتُمْ اِلَّا بَشَرٌ مِّثْلُنَا ۙ وَ مَآ اَنْزَلَ الرَّحْمٰنُ مِنْ شَيْءٍ ۙ اِنْ اَنْتُمْ اِلَّا تَكْذِبُوْنَ ﴿١٥﴾

१७. तिनीहरूले भने, "हाम्रा प्रतिपालकले नै वस्तुतः हामी तिमीहरूका निम्ति (उनका) सन्देशवाहक हौं भन्ने कुरा जान्दछन्;

قَالُوْا رَبُّنَا يَعْلَمُ اِنَّآ اِلَيْكُمْ لَمُرْسَلُوْنَ ﴿١٦﴾

१८. "तथा हाम्रो कर्तव्य ता केवल स्पष्टरूपमा सन्देश पुऱ्याउनु रहेको छ ।"

وَ مَا عَلَيْنَآ اِلَّا الْبَلٰغُ الْمُبِيْنُ ﴿١٧﴾

१९. तिनीहरूले भने, "हामी निश्चय नै तिमीहरू- बाट हाम्रो अमङ्गल हुने अनुमान

قَالُوْٓا اِنَّا تَطَيَّرْنَا بِكُمْ ۚ لَئِنْ لَّمْ تَنْتَهُوْا لَنَرْجُمَنَّكُمْ وَ لَيَمَسَّنَّكُمْ

مِّنَّا عَذَابٌ أَلِيمٌ ﴿١٨﴾

लगाउँछौं; यदि तिमीहरू (त्यसबाट) पछि नहटेमा, हामी अवश्य तिमीहरूमाथि ढुङ्गा बर्साउनेछौं, तथा हाम्रा हातबाट निश्चय नै तिमीहरूलाई एउटा पीडादायक दण्ड मिल्नेछ ।"

قَالُوا طَائِرُكُم مَّعَكُمْ ۚ أَئِن ذُكِّرْتُم ۚ بَلْ أَنتُمْ قَوْمٌ مُّسْرِفُونَ ﴿١٩﴾

२०. तिनीहरूले भने, "तिमीहरूको दुर्भाग्य स्वयम् तिमीहरूसितै रहेको छ । तिमीहरूलाई उपदेश दिएकै कारण त्यसो भनेका हो त? होइन, (अपितु) तिमीहरू यस्ता मानिसहरू हौ जसले सम्पूर्ण सीमाहरूको उल्लङ्घन गरेका छौ ।"

وَجَاءَ مِنْ أَقْصَا الْمَدِينَةِ رَجُلٌ يَسْعَىٰ قَالَ يَا قَوْمِ اتَّبِعُوا الْمُرْسَلِينَ ﴿٢٠﴾

२१. तथा नगरको सुदूर क्षेत्रबाट एउटा व्यक्ति दगुर्दै आयो । त्यसले भन्यो, "हे मेरा जाति(का मानिसहरू) हो, सन्देशवाहकहरूको अनुसरण गर,

اتَّبِعُوا مَن لَّا يَسْأَلُكُمْ أَجْرًا وَهُم مُّهْتَدُونَ ﴿٢١﴾

२२. "तिनीहरूको अनुसरण गर, जसले तिमीहरूसित कुनै प्रतिदान माग्दैनन्, तथा तिनीहरू सन्मार्ग प्राप्त छन् ।

وَمَا لِيَ لَا أَعْبُدُ الَّذِي فَطَرَنِي وَإِلَيْهِ تُرْجَعُونَ ﴿٢٢﴾

२३. "तथा मलाई के भएको छ र जसले मलाई सृष्टि गरे, तथा जसतर्फ तिमीहरूलाई फर्काएर लगिनेछ म उनको उपासना नगरुँ?

أَأَتَّخِذُ مِن دُونِهِ آلِهَةً إِن يُرِدْنِ الرَّحْمَٰنُ بِضُرٍّ لَّا تُغْنِ عَنِّي شَفَاعَتُهُمْ شَيْئًا وَلَا يُنقِذُونِ ﴿٢٣﴾

२४. "के म उनलाई छाडी अन्य कसैलाई उपास्य बनाउन सक्छु र? यदि परम कृपालु (अल्लाह)ले मेरो कुनै हानि गर्न चाहेमा, तिनीहरूको मध्यस्थताले मलाई केही लाभ पुऱ्याउनेछैन, न त तिनीहरूले मलाई बचाउन नै सक्नेछन् ।

إِنِّي إِذًا لَّفِي ضَلَالٍ مُّبِينٍ ﴿٢٤﴾

२५. "त्यस अवस्थामा म अवश्य स्पष्टरूपमा पथभ्रष्ट हुन पुग्नेछु ।

إِنِّي آمَنتُ بِرَبِّكُمْ فَاسْمَعُونِ ﴿٢٥﴾

२६. "म तिमीहरूका प्रतिपालकप्रति विश्वास गर्छु; अतः मेरो कुरा सुन ।"

قِيلَ ادْخُلِ الْجَنَّةَ ۖ قَالَ يَا لَيْتَ قَوْمِي يَعْلَمُونَ ﴿٢٦﴾

२७. (तब उसलाई) यसो भनियो, "स्वर्गमा प्रवेश गर ।" उसले भन्यो, "हाय ! यदि मेरा मानिसहरूलाई ज्ञात भएको भए,

२८. "कसरी मेरा प्रतिपालकले (कृपापूर्वक) मलाई क्षमाप्रदान गरेका छन् तथा मलाई सम्मानित व्यक्तिहरूमा सामेल गरेका छन् ।"

بِمَا غَفَرَ لِيْ رَبِّيْ وَ جَعَلَنِيْ مِنَ الْمُكْرَمِيْنَ ﴿٢٨﴾

२९. तथा उनीपश्चात् हामीले उनका मानिसहरूविरुद्ध आकाशबाट कुनै लस्कर अवतीर्ण गरेनौं, न त कसैलाई अवतीर्ण गर्नु हामीले आवश्यक ठान्यौं ।

وَ مَآ اَنْزَلْنَا عَلٰى قَوْمِهٖ مِنْۢ بَعْدِهٖ مِنْ جُنْدٍ مِّنَ السَّمَآءِ وَمَا كُنَّا مُنْزِلِيْنَ ﴿٢٩﴾

३०. एउटा विस्फोट मात्र के भएको थियो तथा हेर ! तिनीहरू निभेर खरानी हुनपुगे ।

اِنْ كَانَتْ اِلَّا صَيْحَةً وَّاحِدَةً فَاِذَا هُمْ خٰمِدُوْنَ ﴿٣٠﴾

३१. मानव जातिहरूमाथि धिक्कार छ ! जब जब तिनीहरूसमक्ष कुनै सन्देशवाहकको आगमन हुन्छ तिनीहरू उनीमाथि ठट्टा गर्ने गर्छन् ।

يٰحَسْرَةً عَلَى الْعِبَادِ ۚ مَا يَاْتِيْهِمْ مِّنْ رَّسُوْلٍ اِلَّا كَانُوْا بِهٖ يَسْتَهْزِءُوْنَ ﴿٣١﴾

३२. तिनीहरूभन्दा पहिला कति पुस्ताहरूलाई हामीले विनाश गरिसकेका छौं, भन्ने कुरा तिनीहरूले देखेका छैनन् र? तिनीहरू कदापि यिनीहरूतर्फ फर्कनेछैनन् ।

اَلَمْ يَرَوْا كَمْ اَهْلَكْنَا قَبْلَهُمْ مِّنَ الْقُرُوْنِ اَنَّهُمْ اِلَيْهِمْ لَا يَرْجِعُوْنَ ﴿٣٢﴾

३३. तथा तिनीहरू सबैलाई एकत्रित गरी अवश्य हामीसमक्ष उपस्थित गरिनेछ ।

وَاِنْ كُلٌّ لَّمَّا جَمِيْعٌ لَّدَيْنَا مُحْضَرُوْنَ ﴿٣٣﴾

३४. तथा मृत धर्ती तिनीहरूका निम्ति एउटा चिह्नस्वरूप रहेको छ, हामी त्यसलाई जीवित गर्छौं र त्यसबाट अन्न उत्पादन गर्छौं, जसलाई तिनीहरू खाने गर्छन् ।

وَاٰيَةٌ لَّهُمُ الْاَرْضُ الْمَيْتَةُ ۚ اَحْيَيْنٰهَا وَ اَخْرَجْنَا مِنْهَا حَبًّا فَمِنْهُ يَاْكُلُوْنَ ﴿٣٤﴾

३५. तथा त्यसमा हामीले खजूर र अङ्गुरका बगैंचाहरू लगाएका छौं र त्यहाँ पानीका मूलहरू फुटाएर निकालेका छौं,

وَ جَعَلْنَا فِيْهَا جَنّٰتٍ مِّنْ نَّخِيْلٍ وَّ اَعْنَابٍ وَّ فَجَّرْنَا فِيْهَا مِنَ الْعُيُوْنِ ﴿٣٥﴾

३६. ताकि त्यसबाट तिनीहरूले फल खाऊन्, तथा तिनीहरूका हातले ती (बगैंचाहरू) बनाएका थिएनन् । अत: के तिनीहरू कृतज्ञ बन्दैनन् त?

لِيَاْكُلُوْا مِنْ ثَمَرِهٖ ۙ وَ مَا عَمِلَتْهُ اَيْدِيْهِمْ ۚ اَفَلَا يَشْكُرُوْنَ ﴿٣٦﴾

३७. उनी पवित्र छन् जसले सम्पूर्ण वस्तुहरूलाई अर्थात् पृथ्वीले उमार्ने र स्वयम् तिनीहरूलाई तथा तिनीहरूलाई थाहा नभएका वस्तुहरूलाई समेत जोडी-जोडीको रूपमा

سُبْحٰنَ الَّذِيْ خَلَقَ الْاَزْوَاجَ كُلَّهَا مِمَّا تُنْۢبِتُ الْاَرْضُ وَ مِنْ اَنْفُسِهِمْ وَ مِمَّا لَا يَعْلَمُوْنَ ﴿٣٧﴾

सृष्टि गरेका छन् ।

وَاٰيَةٌ لَّهُمُ الَّيْلُ ۖ نَسْلَخُ مِنْهُ النَّهَارَ فَاِذَا هُمْ مُّظْلِمُوْنَ ۝

३८. तथा रात्रि (पनि) तिनीहरूका निम्ति एउटा चिह्न रहेको छ जसबाट तानेर हामी दिन निकाल्छौं, तथा हेर ! तिनीहरू (अकस्मात्) अन्धकारमा डुब्न पुग्छन् ।

وَالشَّمْسُ تَجْرِيْ لِمُسْتَقَرٍّ لَّهَا ۗ ذٰلِكَ تَقْدِيْرُ الْعَزِيْزِ الْعَلِيْمِ ۝

३९. तथा सूर्य त्यसका निम्ति निर्धारित गरिएको मार्गमा गतिशील छ । त्यो सर्व-शक्तिमान, सर्वज्ञ (अल्लाह)को आदेश रहेको छ ।

وَالْقَمَرَ قَدَّرْنٰهُ مَنَازِلَ حَتّٰى عَادَ كَالْعُرْجُوْنِ الْقَدِيْمِ ۝

४०. तथा चन्द्रमाका निम्ति हामीले विभिन्न तलाहरू (अवस्थाहरू) निर्धारण गरेका छौं, अत: त्यो खजूरको पुरानो र सुकेको हाँगोसदृश भई पुन: (फर्किएर) आउँछ ।

لَا الشَّمْسُ يَنْۢبَغِيْ لَهَآ اَنْ تُدْرِكَ الْقَمَرَ وَلَا الَّيْلُ سَابِقُ النَّهَارِ ۗ وَكُلٌّ فِيْ فَلَكٍ يَّسْبَحُوْنَ ۝

४१. चन्द्रमालाई दगुरेर पक्रनु सूर्यको निम्ति सम्भव छैन, न त रात्रिले दिनलाई उछिन्न नै सक्छ । तिनीहरू सबै आ-आफ्नो कक्षमा निरन्तर गतिशील छन् ।

وَاٰيَةٌ لَّهُمْ اَنَّا حَمَلْنَا ذُرِّيَّتَهُمْ فِي الْفُلْكِ الْمَشْحُوْنِ ۝

४२. तथा तिनीहरूका सन्तान सन्ततिलाई भरिपूर्ण समुद्री जहाजमा हामी बहन गर्ने गर्छौं, जुन तिनीहरूका निम्ति एउटा चिह्न रहेको छ ।

وَخَلَقْنَا لَهُمْ مِّنْ مِّثْلِهٖ مَا يَرْكَبُوْنَ ۝

४३. तथा हामी तिनीहरूका निम्ति त्यस्तै अन्य (साधनहरू) सृष्टि गर्नेछौं जसमा तिनीहरू सवार हुनेछन् ।

وَاِنْ نَّشَاْ نُغْرِقْهُمْ فَلَا صَرِيْخَ لَهُمْ وَلَا هُمْ يُنْقَذُوْنَ ۝

४४. तथा यदि हामीले चाहेमा, हामी तिनीहरूलाई डुबाउन सक्छौं, त्यस अवस्थामा तिनीहरूलाई सहयोग पुऱ्याउने कोही हुनेछैन, न त तिनीहरूको परित्राण नै हुनेछ,

اِلَّا رَحْمَةً مِّنَّا وَمَتَاعًا اِلٰى حِيْنٍ ۝

४५. (परन्तु) केवल हाम्रो करुणाद्वारा, तथा केही समयका निम्ति जीविकास्वरुप,

وَاِذَا قِيْلَ لَهُمُ اتَّقُوْا مَا بَيْنَ اَيْدِيْكُمْ وَمَا خَلْفَكُمْ لَعَلَّكُمْ تُرْحَمُوْنَ ۝

४६. तथा जब तिनीहरूलाई भनिन्छ, "तिमीहरू आफूभन्दा सामुन्नेको र आफूभन्दा पछाडिको (परिस्थितिबाट) स्वयम्लाई बचाऊ, जसको फलस्वरूप तिमीहरूलाई करुणा प्राप्त

हुनेछ," - तब तिनीहरू विमुख हुन्छन्) ।

४७. तथा तिनीहरूका प्रतिपालकका चिह्नहरूमध्ये जब तिनीहरूसमक्ष कुनै चिह्नको आगमन हुन्छ, तिनीहरू त्यसबाट विमुख हुन पुग्छन् ।

وَمَا تَأْتِيهِم مِّنْ آيَةٍ مِّنْ آيَاتِ رَبِّهِمْ إِلَّا كَانُوا عَنْهَا مُعْرِضِينَ ﴿٤٧﴾

४८. तथा जब तिनीहरूलाई भनिन्छ, "अल्लाहले तिमीहरूलाई प्रदान गरेका वस्तुहरूबाट खर्च गर," तब ती अविश्वासीहरू विश्वासी व्यक्तिहरूसित भन्छन्, "के हामी त्यसलाई ख्वाऔं जसलाई यदि अल्लाहले चाहेका भए ख्वाउन सक्ने थिए? तिमीहरू ता खुल्लम खुल्ला रूपमा पथभ्रष्ट हुन पुगेका छौ ।"

وَإِذَا قِيلَ لَهُمْ أَنفِقُوا مِمَّا رَزَقَكُمُ اللَّهُ قَالَ الَّذِينَ كَفَرُوا لِلَّذِينَ آمَنُوا أَنُطْعِمُ مَن لَّوْ يَشَاءُ اللَّهُ أَطْعَمَهُ إِنْ أَنتُمْ إِلَّا فِي ضَلَالٍ مُّبِينٍ ﴿٤٨﴾

४९. तथा तिनीहरू भन्छन्, "यदि तिमीहरू (वास्तवमै) साँचा हौ भने, त्यो प्रतिश्रुति कहिले (पूरा) हुनेछ त?"

وَيَقُولُونَ مَتَىٰ هَٰذَا الْوَعْدُ إِن كُنتُمْ صَادِقِينَ ﴿٤٩﴾

५०. तिनीहरू केवल एउटा यस्तो विस्फोटको प्रतीक्षामा छन् जसले तिनीहरूलाई विवादमा व्यस्त रहेकै अवस्थामा समात्ने छ ।

مَا يَنظُرُونَ إِلَّا صَيْحَةً وَاحِدَةً تَأْخُذُهُمْ وَهُمْ يَخِصِّمُونَ ﴿٥٠﴾

५१. तथा तिनीहरूले न कुनै इच्छापत्र तयार पार्न सक्नेछन्, न त तिनीहरू आफ्ना परिवारतर्फ फर्कन नै सक्नेछन् ।

فَلَا يَسْتَطِيعُونَ تَوْصِيَةً وَلَا إِلَىٰ أَهْلِهِمْ يَرْجِعُونَ ﴿٥١﴾

५२. तथा बिगुल बजाइनेछ, तथा हेर ! तिनीहरू अकस्मात चिहानबाट निस्केर आफ्ना प्रतिपालकतर्फ दगुर्न लाग्नेछन् ।

وَنُفِخَ فِي الصُّورِ فَإِذَا هُم مِّنَ الْأَجْدَاثِ إِلَىٰ رَبِّهِمْ يَنسِلُونَ ﴿٥٢﴾

५३. तिनीहरूले भन्नेछन्, "हाय, हामीमाथि धिक्कार छ ! हामीलाई शयनकक्षबाट कसले ब्युँझायो? यो ता त्यही कुरो हो जसका बारेमा परम कृपालु (अल्लाहले) वचन दिएका थिए, तथा सन्देशवाहकहरूले पनि सत्य कुरा गरेका थिए ।"

قَالُوا يَا وَيْلَنَا مَن بَعَثَنَا مِن مَّرْقَدِنَا ۜ هَٰذَا مَا وَعَدَ الرَّحْمَٰنُ وَصَدَقَ الْمُرْسَلُونَ ﴿٥٣﴾

५४. त्यो एउटा अकस्मात विस्फोट हुनेछ, तथा हेर ! तिनीहरूलाई क्षणमै हाम्रा सामुन्ने खडा गरिनेछ ।

إِن كَانَتْ إِلَّا صَيْحَةً وَاحِدَةً فَإِذَا هُمْ جَمِيعٌ لَّدَيْنَا مُحْضَرُونَ ﴿٥٤﴾

فَالْيَوْمَ لَا تُظْلَمُ نَفْسٌ شَيْئًا وَلَا تُجْزَوْنَ إِلَّا مَا كُنْتُمْ تَعْمَلُونَ ﴿٥٥﴾

५५. तथा त्यस दिन, कुनै आत्मामाथि रत्तिभर पनि अत्याचार हुनेछैन, तथा तिमीहरूलाई तिमीहरूले गर्ने गरेका कार्यहरूअनुसार नै प्रतिदान प्रदान गरिनेछ ।

إِنَّ أَصْحَابَ الْجَنَّةِ الْيَوْمَ فِي شُغُلٍ فَاكِهُونَ ﴿٥٦﴾

५६. वस्तुतः त्यसदिन स्वर्गका निवासीहरू प्रसन्नतापूर्वक विभिन्न व्यवसायहरूमा व्यस्त हुनेछन् ।

هُمْ وَأَزْوَاجُهُمْ فِي ظِلَالٍ عَلَى الْأَرَائِكِ مُتَّكِئُونَ ﴿٥٧﴾

५७. तिनीहरू र तिनीहरूका साथीहरू शान्तिप्रद छाँयामा उच्च पलङ्गमाथि, सिह्रानीमा ढल्किएका हुनेछन् ।

لَهُمْ فِيهَا فَاكِهَةٌ وَلَهُمْ مَا يَدَّعُونَ ﴿٥٨﴾

५८. त्यहाँ तिनीहरूलाई फलहरू प्रदान गरिनेछ, तथा तिनीहरूले जे माग्नेछन् त्यो वस्तु तिनीहरूलाई प्रदान गरिनेछ ।

سَلَامٌ قَوْلًا مِنْ رَبٍّ رَحِيمٍ ﴿٥٩﴾

५९. "(तिमीहरूमाथि) शान्ति होस्" भन्ने वाणीस्वरूप करुणामय प्रतिपालकका तर्फबाट तिनीहरूलाई शुभकामना मिल्नेछ ।

وَامْتَازُوا الْيَوْمَ أَيُّهَا الْمُجْرِمُونَ ﴿٦٠﴾

६०. तथा (अल्लाहले भन्नेछन्), "ए अपराधी व्यक्तिहरू हो ! आज तिमीहरू (धर्मनिष्ठ व्यक्तिहरूबाट) पृथक होऊ,

أَلَمْ أَعْهَدْ إِلَيْكُمْ يَا بَنِي آدَمَ أَنْ لَا تَعْبُدُوا الشَّيْطَانَ إِنَّهُ لَكُمْ عَدُوٌّ مُبِينٌ ﴿٦١﴾

६१. "ए आदमका पुत्रंहरू हो, तिमीहरू शैतानको उपासना नगर – किनभने त्यो तिमीहरूको एउटा खुल्लमखुल्ला शत्रु हो" – भनी मैले तिमीहरूलाई दायित्वबोध गराएको थिइनँ र?

وَأَنِ اعْبُدُونِي هَذَا صِرَاطٌ مُسْتَقِيمٌ ﴿٦٢﴾

६२. तथा तिमीहरू केवल मेरो उपासना गर यही नै सन्मार्ग रहेको छ ।

وَلَقَدْ أَضَلَّ مِنْكُمْ جِبِلًّا كَثِيرًا أَفَلَمْ تَكُونُوا تَعْقِلُونَ ﴿٦٣﴾

६३. तथा तिमीहरूको एउटा ठूलो सङ्ख्यालाई उसले पथभ्रष्ट गऱ्यो । अतः तिमीहरूले किन त्यो कुरा बुझेनौ ?

هَذِهِ جَهَنَّمُ الَّتِي كُنْتُمْ تُوعَدُونَ ﴿٦٤﴾

६४. ञो त्यही नर्क हो जसको तिमीहरूलाई प्रतिश्रुति दिइएको थियो ।

اصْلَوْهَا الْيَوْمَ بِمَا كُنْتُمْ تَكْفُرُونَ ﴿٦٥﴾

६५. तिमीहरूको अविश्वासका कारण आज तिमीहरू यसमा प्रवेश गर ।"

اَلْيَوْمَ نَخْتِمُ عَلٰٓى اَفْوَاهِهِمْ وَ تُكَلِّمُنَآ اَيْدِيْهِمْ وَ تَشْهَدُ اَرْجُلُهُمْ بِمَا كَانُوْا يَكْسِبُوْنَ ﴿٦٥﴾

६६. त्यसदिन हामी तिनीहरूका मुखमा लाहाछाप लगाउनेछौं, तथा तिनीहरूका हात हामीसित बोल्नेछन्, तथा तिनीहरूका क्रियाकलाप- हरूबारे तिनीहरूका पाउले साक्षी दिनेछन् ।

وَلَوْ نَشَآءُ لَطَمَسْنَا عَلٰٓى اَعْيُنِهِمْ فَاسْتَبَقُوا الصِّرَاطَ فَاَنّٰى يُبْصِرُوْنَ ﴿٦٦﴾

६७. तथा यदि हामीले चाहेका भए तिनीहरूलाई नेत्रहीन बनाउन सक्नेथियौं, तब तिनीहरू बाटो खोज्दै हिँड्ने थिए । परन्तु तिनीहरूले देख्न कहाँ सक्छन् र?

وَلَوْ نَشَآءُ لَمَسَخْنٰهُمْ عَلٰى مَكَانَتِهِمْ فَمَا اسْتَطَاعُوْا مُضِيًّا وَّلَا يَرْجِعُوْنَ ﴿٦٧﴾

६८. तथा यदि हामीले चाहेका भए, तिनीहरूलाई आ- आफ्ना स्थानमा (स्थिर रहने वस्तुस्वरूप तिनीहरूलाई) रुपान्तर गर्न सक्नेथियौं, त्यस अवस्थामा तिनीहरू न अघि बढ्न सक्ने थिए न त पछि फर्कन नै ।

وَمَنْ نُّعَمِّرْهُ نُنَكِّسْهُ فِى الْخَلْقِ ؕ اَفَلَا يَعْقِلُوْنَ ﴿٦٨﴾

६९. तथा जसलाई हामी लामो उमेर प्रदान गर्छौं– त्यसलाई हामी शक्तिमा दुर्बलावस्था तर्फ फर्काउँछौं । तथापि के तिनीहरू बुझ्दैनन् त?

وَمَا عَلَّمْنٰهُ الشِّعْرَ وَمَا يَنْۢبَغِىْ لَهٗ ؕ اِنْ هُوَ اِلَّا ذِكْرٌ وَّ قُرْاٰنٌ مُّبِيْنٌ ﴿٦٩﴾

७०. तथा हामीले उनलाई कविता सिकाएका छैनौं, न त त्यो उनका निम्ति शोभनीय हुन सक्छ । यो ता केवल एउटा स्मारकस्वरूप तथा एउटा (यस्तो) कुरान हो जसले (सम्पूर्ण कुराहरूलाई) स्पष्ट रूपमा वर्णन गर्छ,

لِّيُنْذِرَ مَنْ كَانَ حَيًّا وَّيَحِقَّ الْقَوْلُ عَلَى الْكٰفِرِيْنَ ﴿٧٠﴾

७१. ताकि सम्पूर्ण जीवित (व्यक्तिहरू) लाई यसले सावधान गरोस्, तथा अविश्वासी व्यक्तिहरूविरुद्धको निर्णय पूर्ण होस् ।

اَوَلَمْ يَرَوْا اَنَّا خَلَقْنَا لَهُمْ مِّمَّا عَمِلَتْ اَيْدِيْنَآ اَنْعَامًا فَهُمْ لَهَا مٰلِكُوْنَ ﴿٧١﴾

७२. हामीले आफ्नो ईश्वरीय शक्तिद्वारा सिर्जना गरेका वस्तुहरूमध्ये तिनीहरूका निम्ति चौपायाहरू सृष्टि गरेका छौं जसका तिनीहरू स्वामी बनेका छन्, के तिनीहरू देख्दैनन् ?

وَ ذَلَّلْنٰهَا لَهُمْ فَمِنْهَا رَكُوْبُهُمْ وَ مِنْهَا يَاْكُلُوْنَ ﴿٧٢﴾

७३. तथा हामीले ती (पशुहरूलाई) तिनीहरूका अधीनस्थ तुल्याएका छौं, फलस्वरूप तिनीहरूमध्ये केहीलाई (आफ्ना) सवारीस्वरूप उपयोग गर्छन् भने अन्य

केहीलाई तिनीहरू खाने गर्छन् ।

وَ لَهُمْ فِيْهَا مَنَافِعُ وَ مَشَارِبُ ؕ اَفَلَا يَشْكُرُوْنَ ﴿٧٣﴾

७४. तथा तिनीहरूमा उनीहरूका निम्ति अन्यान्य उपयोगिताहरू छन् तथा पिउने पदार्थ (पनि) । अतः के तिनीहरू कृतज्ञ बन्दैनन् त?

وَاتَّخَذُوْا مِنْ دُوْنِ اللّٰهِ اٰلِهَةً لَّعَلَّهُمْ يُنْصَرُوْنَ ﴿٧٤﴾

७५. तथा तिनीहरूले अल्लाहलाई छाडी (अन्यान्य) उपास्यहरू तुल्याएका छन्, ताकि तिनीहरूलाई सहयोग प्राप्त होस् ।

لَا يَسْتَطِيْعُوْنَ نَصْرَهُمْ ۙ وَ هُمْ لَهُمْ جُنْدٌ مُّحْضَرُوْنَ ﴿٧٥﴾

७६. तिनीहरूले उनीहरूलाई केही सहयोग गर्न सक्ने छैनन्; (त्यस विपरित) तिनीहरूलाई समेत उनीहरूसितै एकत्रित गरी उपस्थित गरिनेछ ।

فَلَا يَحْزُنْكَ قَوْلُهُمْ ۘ اِنَّا نَعْلَمُ مَا يُسِرُّوْنَ وَ مَا يُعْلِنُوْنَ ﴿٧٦﴾

७७. अतः तिनीहरूको कुराले तिमीलाई दुखित नतुल्याओस् । वस्तुतः जुन कुरा तिनीहरू लुकाउँछन् र जुन कुरा प्रकट गर्छन् हामी (ती सबै कुराहरूलाई) जान्दछौं ।

اَوَ لَمْ يَرَ الْاِنْسَانُ اَنَّا خَلَقْنٰهُ مِنْ نُّطْفَةٍ فَاِذَا هُوَ خَصِيْمٌ مُّبِيْنٌ ﴿٧٧﴾

७८. के मानिसलाई हामीले उसलाई (केवल) एउटा वीर्यको थोपाबाट सृष्टि गरेका हौं भन्ने कुरा थाहा छैन र? तथापि हेर ! उ एउटा खुल्लमखुल्ला झगडालु हुन पुग्छ !

وَضَرَبَ لَنَا مَثَلًا وَّ نَسِيَ خَلْقَهٗ ؕ قَالَ مَنْ يُّحْيِ الْعِظَامَ وَهِيَ رَمِيْمٌ ﴿٧٨﴾

७९. तथा हाम्रा सम्बन्धमा उदाहरण दिन लाग्छ तथा आफ्नो सृष्टिबारे भुल्न पुग्छ । त्यो के भन्छ भने, “हड्डीहरू मकिएर सडेपछि तिनीहरूलाई कसले जीवित गर्न सक्छ र?”

قُلْ يُحْيِيْهَا الَّذِيْٓ اَنْشَاَهَآ اَوَّلَ مَرَّةٍ ؕ وَ هُوَ بِكُلِّ خَلْقٍ عَلِيْمُۨ ﴿٧٩﴾

८०. तिमी भन, “जसले तिनीहरूलाई पहिला पटक सृष्टि गरेका थिए, उनैले तिनीहरूलाई जीवित गर्नेछन्, तथा हर (प्रकारका) सृष्टिलाई उनी राम्ररी जान्दछन्,

الَّذِيْ جَعَلَ لَكُمْ مِّنَ الشَّجَرِ الْاَخْضَرِ نَارًا فَاِذَآ اَنْتُمْ مِّنْهُ تُوْقِدُوْنَ ﴿٨٠﴾

८१. “ती (उनै हुन्) जसले तिमीहरूका निम्ति हरियो वृक्षबाट अग्नि उत्पन्न गर्छन् तथा सुन, तिमीहरू त्यसैद्वारा आगो सल्काउने गर्छौं ।

اَوَلَيْسَ الَّذِيْ خَلَقَ السَّمٰوٰتِ وَالْاَرْضَ بِقٰدِرٍ عَلٰٓى اَنْ يَّخْلُقَ مِثْلَهُمْ ؕ بَلٰى ۗ وَهُوَ الْخَلّٰقُ الْعَلِيْمُ ﴿٨١﴾

८२. जसले आकाशमण्डल र पृथ्वी सृष्टि गरे के उनमा तिनीहरूजस्तै अन्य (प्राणी) सृष्टि गर्ने शक्ति छैन र?” अवश्य छ, तथा उनी

निस्सन्देह सर्वश्रेष्ठ सृष्टिकर्ता, सर्वज्ञ रहेका छन्
।

إِنَّمَآ أَمۡرُهُۥٓ إِذَآ أَرَادَ شَيۡـًٔا أَن يَقُولَ لَهُۥ كُن فَيَكُونُ ﴿٨٢﴾

८३. वस्तुतः उनको आदेश - कस्तो छ भने), जब उनी कुनै वस्तुबारे सङ्कल्प गर्छन्, त्यसबारे उनी त्यसलाई (केवल) के भन्छन् भने, "भएस् !" तथा त्यो वस्तु हुन लाग्छ ।

فَسُبۡحَٰنَ ٱلَّذِي بِيَدِهِۦ مَلَكُوتُ كُلِّ شَيۡءٖ وَإِلَيۡهِ تُرۡجَعُونَ ﴿٨٣﴾

८४. अतः जसका हातमा सम्पूर्ण वस्तुहरूको आधिपत्य रहेको छ, उनी परम पवित्र छन् । तथा उनैतर्फ तिमीहरू सबैलाई फर्काएर लगिनेछ ।




## अल्- साफ्फात
(हिजरतअघि अवतरित)

बِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

وَالصّٰٓفّٰتِ صَفًّا ②

२. जुन व्यक्तिहरू काँधमा काँध मिलाएर पङ्क्तिबद्ध खडा छन् तिनीहरूकै शपथ,

فَالزّٰجِرٰتِ زَجْرًا ③

३. त्यसपछि तिनीहरू पराक्रमका साथ शत्रुलाई भगाउँछन्,

فَالتّٰلِيٰتِ ذِكْرًا ④

४. त्यसपछि तिनीहरू स्मारक (स्वरूप) बारम्बार (कुरानको) पाठ गर्छन्,

اِنَّ اِلٰهَكُمْ لَوَاحِدٌ ⑤

५. तिमीहरूका उपास्य निश्चय नै एकमात्र (उपास्य) रहेका छन्,

رَبُّ السَّمٰوٰتِ وَالْاَرْضِ وَمَا بَيْنَهُمَا وَرَبُّ الْمَشَارِقِ ⑥

६. (उनी) आकाशमण्डल र पृथ्वीका तथा तिनीहरूका बीचमा रहेका सम्पूर्ण वस्तुहरूका र सूर्योदय (हुने स्थानहरू)का स्वामी हुन् ।

اِنَّا زَيَّنَّا السَّمَآءَ الدُّنْيَا بِزِيْنَةِ ۨالْكَوَاكِبِ ⑦

७. हामीले तल्लो आकाशलाई नक्षत्रहरूको अलङ्कारद्वारा सुशोभित तुल्याएका छौं ।

وَحِفْظًا مِّنْ كُلِّ شَيْطٰنٍ مَّارِدٍ ⑧

८. तथा हरेक विद्रोही सैतानबाट त्यसलाई सुरक्षित तुल्याएका छौं ।

لَا يَسَّمَّعُوْنَ اِلَى الْمَلَاِ الْاَعْلٰى وَيُقْذَفُوْنَ مِنْ كُلِّ جَانِبٍ ⑨

९. तिनीहरूले अति प्रयत्न गरेर पनि महान सभामा भएका कुरा सुन्न सक्नेछैनन्– तथा हरेक दिशाबाट भगाइन्छन्,

دُحُوْرًا وَّلَهُمْ عَذَابٌ وَّاصِبٌ ⑩ .

१०. धक्का दिएर, तथा तिनीहरूलाई

चिरस्थायी दण्ड मिल्नेछ–

إِلَّا مَنْ خَطِفَ الْخَطْفَةَ فَأَتْبَعَهُ شِهَابٌ ثَاقِبٌ ﴿١٠﴾

१०. परन्तु, (तिनीहरूमध्ये) जसले (कुनै कुरो) चोरेर भाग्छ, त्यसलाई एउटा मर्मभेदी (अग्निको) ज्वालाले पछ्याउँछ ।

فَاسْتَفْتِهِمْ أَهُمْ أَشَدُّ خَلْقًا أَمْ مَنْ خَلَقْنَا ۚ إِنَّا خَلَقْنَاهُمْ مِنْ طِينٍ لَازِبٍ ﴿١١﴾

११. अतः के हामीले सृष्टि गरेका वस्तुहरूभन्दा तिनीहरूले सृष्टि गर्न सक्ने वस्तु अधिक टिकाउ छ? भनी तिनीहरूलाई सोध । हामीले तिनीहरूलाई टाँसिने गिलो माटोबाट बनाएका हौं ।

بَلْ عَجِبْتَ وَيَسْخَرُونَ ﴿١٢﴾

१२. होइन, (अपितु) तिमी अचम्भित हुन्छौं, तथा तिनीहरूले उपहास गर्छन् ।

وَإِذَا ذُكِّرُوا لَا يَذْكُرُونَ ﴿١٣﴾

१३. तथा जब तिनीहरूलाई अर्ती दिइन्छ, तिनीहरू त्यसप्रति ध्यान दिँदैनन् ।

وَإِذَا رَأَوْا آيَةً يَسْتَسْخِرُونَ ﴿١٤﴾

१४. तथा जब तिनीहरू कुनै चिह्न देख्छन्, त्यसप्रति ठट्टा गर्न लाग्छन् ।

وَقَالُوا إِنْ هَٰذَا إِلَّا سِحْرٌ مُبِينٌ ﴿١٥﴾

१५. तथा तिनीहरू भन्छन्, "यो ता एउटा जादुबाहेक केही होइन ।

أَإِذَا مِتْنَا وَكُنَّا تُرَابًا وَعِظَامًا أَإِنَّا لَمَبْعُوثُونَ ﴿١٦﴾

१६. "के ! जब हामी मर्छौं र त्यसपछि धुलो र हड्डीमा परिणत हुन्छौं, तब के हामीलाई पुनर्जीवित गरिनेछ त?

أَوَآبَاؤُنَا الْأَوَّلُونَ ﴿١٧﴾

१७. "तथा हाम्रा अतीतका पुर्खाहरूलाई (समेत)?"

قُلْ نَعَمْ وَأَنْتُمْ دَاخِرُونَ ﴿١٨﴾

१८. तिमी भन, "हो, तब तिमीहरू अपमानित हुनेछौ ।"

فَإِنَّمَا هِيَ زَجْرَةٌ وَاحِدَةٌ فَإِذَا هُمْ يَنْظُرُونَ ﴿١٩﴾

१९. त्यससमय त्यो त केवल एउटा कडा हप्कीस्वरूप हुनेछ, तथा सुन, तिनीहरू हेर्न लाग्नेछन् ।

وَقَالُوا يَا وَيْلَنَا هَٰذَا يَوْمُ الدِّينِ ﴿٢٠﴾

२०. तथा तिनीहरूले भन्नेछन्, "हामीमाथि धिक्कार छ ! यो त हिसाब

किताबको दिन हो ।

२२. "यो त्यही (अन्तिम) निर्णयको दिन हो जसलाई तिमीहरू अस्वीकार गर्ने गर्थ्यौ ।"

هٰذَا يَوْمُ الْفَصْلِ الَّذِيْ كُنْتُمْ بِهٖ تُكَذِّبُوْنَ ﴿٢١﴾

२३. (तथा फरिस्ताहरूलाई के भनिनेछ भने), "जसले अत्याचार गरेका थिए ती व्यक्तिहरूलाई तिनीहरूका भाइबन्धुसहित, तथा जसको तिनीहरू उपासना गर्ने गर्थे ती सबैलाई एकत्रित गर ।"

اُحْشُرُوا الَّذِيْنَ ظَلَمُوْا وَاَزْوَاجَهُمْ وَمَا كَانُوْا يَعْبُدُوْنَ ﴿٢٢﴾

२४. "अल्लाहलाई छाडी, तथा तिनीहरू सबैलाई अग्निको मार्गतर्फ लिएर जाऊ,

مِنْ دُوْنِ اللّٰهِ فَاهْدُوْهُمْ اِلٰى صِرَاطِ الْجَحِيْمِ ﴿٢٣﴾

२५. "तथा तिनीहरूलाई खडा गर, किनभने तिनीहरूसित प्रश्न गरिनेछ ।"

وَقِفُوْهُمْ اِنَّهُمْ مَّسْـُٔوْلُوْنَ ﴿٢٤﴾

२६. "तिमीहरूलाई के भएको छ र तिमीहरू परस्पर एक-अर्कालाई सहयोग गर्दैनौ?"

مَا لَكُمْ لَا تَنَاصَرُوْنَ ﴿٢٥﴾

२७. होइन, (अपितु) त्यसदिन तिनीहरूले आत्मसमर्पण गर्नेछन् ।

بَلْ هُمُ الْيَوْمَ مُسْتَسْلِمُوْنَ ﴿٢٦﴾

२८. तथा तिनीहरूमध्ये केही व्यक्तिहरू अन्य व्यक्तिहरूसित परस्पर प्रश्न गर्दै बोल्न लाग्नेछन् ।

وَاَقْبَلَ بَعْضُهُمْ عَلٰى بَعْضٍ يَّتَسَآءَلُوْنَ ﴿٢٧﴾

२९. तिनीहरूले भन्नेछन्, "वस्तुतः तिमीहरू दाहिने तर्फबाट हामीसमक्ष आउने गर्थ्यौ ।"

قَالُوْٓا اِنَّكُمْ كُنْتُمْ تَاْتُوْنَنَا عَنِ الْيَمِيْنِ ﴿٢٨﴾

३०. तिनीहरूले उत्तर दिनेछन्, "होइन, (अपितु) तिमीहरू स्वयम् नै विश्वासी थिएनौ ।"

قَالُوْا بَلْ لَّمْ تَكُوْنُوْا مُؤْمِنِيْنَ ﴿٢٩﴾

३१. "तिमीहरूमाथि हामीलाई कुनै अधिकार प्राप्त थिएन, परन्तु तिमीहरू

وَمَا كَانَ لَنَا عَلَيْكُمْ مِّنْ سُلْطٰنٍ ۚ بَلْ كُنْتُمْ قَوْمًا طٰغِيْنَ ﴿٣٠﴾

स्वयम् सीमोल्लङ्घनकारी मानिसहरू थियौ

فَحَقَّ عَلَيْنَا قَوْلُ رَبِّنَآ ۖ إِنَّا لَذَآئِقُونَ ﴿٣١﴾

३२. "हामीले अवश्य दण्डको स्वाद चाख्नुपर्नेछ भन्ने हाम्रा प्रतिपालकको वचन आज हामीविरुद्ध सत्य प्रमाणित हुन पुगेको छ ।

فَأَغْوَيْنَٰكُمْ إِنَّا كُنَّا غَٰوِينَ ﴿٣٢﴾

३३. तथा हामीले तिमीहरूलाई पथभ्रष्ट तुल्याएका थियौं, किनभने हामी स्वयम् पनि पथभ्रष्ट भएका थियौं ।"

فَإِنَّهُمْ يَوْمَئِذٍ فِى ٱلْعَذَابِ مُشْتَرِكُونَ ﴿٣٣﴾

३४. साँच्चै नै, त्यसदिन तिनीहरू (सबै) दण्डका सहभागी हुनेछन् ।

إِنَّا كَذَٰلِكَ نَفْعَلُ بِٱلْمُجْرِمِينَ ﴿٣٤﴾

३५. निश्चय नै, अपराधीहरूसित हामी यस्तै व्यवहार गर्ने गर्छौं :

إِنَّهُمْ كَانُوٓا۟ إِذَا قِيلَ لَهُمْ لَآ إِلَٰهَ إِلَّا ٱللَّهُ يَسْتَكْبِرُونَ ﴿٣٥﴾

३६. किनभने जब तिनीहरूलाई भनिन्थ्यो, "अल्लाहबाहेक अन्य कोही उपास्य छैन," तिनीहरू अहङ्कारका साथ विमुख हुन्थे,

وَيَقُولُونَ أَئِنَّا لَتَارِكُوٓا۟ ءَالِهَتِنَا لِشَاعِرٍ مَّجْنُونٍۭ ﴿٣٦﴾

३७. तथा भन्थे, "एउटा पागल कविले भन्दैमा हामी आफ्ना उपास्यहरूलाई त्याग्नेछौं र?"

بَلْ جَآءَ بِٱلْحَقِّ وَصَدَّقَ ٱلْمُرْسَلِينَ ﴿٣٧﴾

३८. होइन, (वस्तुतः) उनी सत्यका साथ आएका छन् तथा (सम्पूर्ण) सन्देशवाहकहरूको सत्यतालाई साबित गर्छन् ।

إِنَّكُمْ لَذَآئِقُوا۟ ٱلْعَذَابِ ٱلْأَلِيمِ ﴿٣٨﴾

३९. तिमीहरूले अवश्य पीडादायक दण्ड भोग्नेछौ ।

وَمَا تُجْزَوْنَ إِلَّا مَا كُنتُمْ تَعْمَلُونَ ﴿٣٩﴾

४०. तथा तिमीहरूले केवल आफ्नै कमाइको प्रतिफल पाउनेछौ–

إِلَّا عِبَادَ ٱللَّهِ ٱلْمُخْلَصِينَ ﴿٤٠﴾

४१. केवल अल्लाहले चुनेका भृत्यहरूबाहेक,

أُولَٰئِكَ لَهُمْ رِزْقٌ مَّعْلُومٌ ﴿٤١﴾

४२. तिनीहरूलाई पूर्वपरिचित जीविका प्राप्त हुनेछ :

فَوَاكِهُ ۖ وَهُم مُّكْرَمُونَ ﴿٤٢﴾

४३. (अर्थात्) फलहरू, तथा तिनीहरूलाई सम्मानित गरिनेछ,

فِي جَنَّاتِ النَّعِيمِ ﴿٤٣﴾

४४. वैभवपूर्ण बगैंचाहरूमा,

عَلَىٰ سُرُرٍ مُّتَقَابِلِينَ ﴿٤٤﴾

४५. परस्पर आमने-सामने सिंहासनमा (विराजमान) हुनेछन् ।

يُطَافُ عَلَيْهِم بِكَأْسٍ مِّن مَّعِينٍ ﴿٤٥﴾

४६. बग्दो मूलको पानीले भरिएका प्याला तिनीहरूको सेवामा पुऱ्याइनेछ,

بَيْضَاءَ لَذَّةٍ لِّلشَّارِبِينَ ﴿٤٦﴾

४७. (त्यो टल्किने) सेतो रङ्गको हुनेछ, जुन पिउने व्यक्तिहरूका निम्ति सन्तोषप्रद हुनेछ ।

لَا فِيهَا غَوْلٌ وَلَا هُمْ عَنْهَا يُنزَفُونَ ﴿٤٧﴾

४८. तिनीहरूमा कुनै प्रकारको नशा हुनेछैन, न त त्यसबाट तिनीहरू बुद्धि भ्रष्ट नै हुनेछन्

وَعِندَهُمْ قَاصِرَاتُ الطَّرْفِ عِينٌ ﴿٤٨﴾

४९. तथा तिनीहरूसित आफ्ना नेत्रहरूलाई नियन्त्रित राख्ने (तथा) ठूलाठूला सुन्दर नेत्र भएका पवित्र महिलाहरू हुनेछन्,

كَأَنَّهُنَّ بَيْضٌ مَّكْنُونٌ ﴿٤٩﴾

५०. मानौं ती ढाकेर राखिएका अण्डाहरू हुन्*।

---

* बैजुन ( بَيْضٌ ) बैजतुन ( بَيْضَةٌ ) स्वरुप शुतुर्मुर्गको अथवा कुनै अन्य पक्षीको डिम्बालाई भनिन्छ । जब प्रशंसास्वरुप 'हुव बैजतुल बलद्' ( هُوَ بَيْضَةُ الْبَلَدِ ) भनिन्छ, त्यसको अर्थ हुन्छ 'त्यो व्यक्ति शुतुर्मुर्गको यस्तो डिम्बा जस्तै रहेको छ जुन (डिम्बा) भित्र सानु पक्षी हुन्छ, किनभने त्यस्तो अवस्थामा भाले शुतुर्मुर्गले त्यसको सुरक्षा गर्छ; अथवा त्यो महानतामा बेजोड रहेको हुन्छ, एक्लै छाडिएको डिम्बा जस्तो, वा त्या स्वामी, अथवा मुखिया, वा त्यो बलद् ( بلد ) (देश अथवा त्यस्तै कुनै प्रान्त) को एउटा यस्तो अतुलनीय व्यक्ति हो जसको अन्य व्यक्तिहरूले आश्रय लिने गर्छन्, तथा त्यसका कुराहरू अन्य व्यक्तिहरूले स्वीकार्छन्, अथवा त्यो व्यक्ति सुप्रसिद्ध वा सुविख्यात रहेको छ । अतः बैजुन् मक्नुन् ( بَيْضٌ مَّكْنُونٌ ) को अर्थ

५१. त्यसपछि तिनीहरूमध्ये केही व्यक्तिहरूले अन्य व्यक्तिहरूसित परस्पर प्रश्न गर्दै वार्ता गर्नेछन् ।

فَأَقْبَلَ بَعْضُهُمْ عَلَىٰ بَعْضٍ يَتَسَاءَلُونَ ﴿٥١﴾

५२. तिनीहरूमध्ये एउटा वक्ताले भन्नेछ, "मेरो एउटा मित्र थियो,

قَالَ قَائِلٌ مِّنْهُمْ إِنِّي كَانَ لِي قَرِينٌ ﴿٥٢﴾

५३. उसले के भन्ने गर्थ्यो भने, "के तिमी पनि (यी कुराहरूलाई) सत्य मान्ने व्यक्तिहरूमध्ये (एक) रहेका छौ?"

يَقُولُ أَئِنَّكَ لَمِنَ الْمُصَدِّقِينَ ﴿٥٣﴾

५४. (अर्थात्) "जब हामी मरेर माटो र हड्डी(का टुक्राहरू)मा परिणत हुनेछौं, तव के साँच्चै नै हामीलाई प्रतिफल दिइने छ त ?

أَإِذَا مِتْنَا وَكُنَّا تُرَابًا وَعِظَامًا أَإِنَّا لَمَدِينُونَ ﴿٥٤﴾

५५. त्यस वक्ताले सोध्नेछ, "के तिमीहरूमध्ये कसैले एक झलक (त्यसको अवस्था) हेर्न सक्छौ?"

قَالَ هَلْ أَنتُم مُّطَّلِعُونَ ﴿٥٥﴾

५६. त्यसपछि उसले स्वयम् हेर्नेछ र उसलाई (सांसारिक मित्रलाई) नर्कका बीचमा देख्नेछ ।

فَاطَّلَعَ فَرَآهُ فِي سَوَاءِ الْجَحِيمِ ﴿٥٦﴾

५७. एसले भन्नेछ, "अल्लाहको शपथ, तिमीले ता मलाई समेत नाश गर्न लागेका थियौ ।

قَالَ تَاللَّهِ إِن كِدتَّ لَتُرْدِينِ ﴿٥٧﴾

५८. त्था यदि मेरा प्रतिपालकको अनुग्रह नरेहको भए म पनि अवश्य ती व्यक्तिहरूमध्ये (को) हुने थिएँ जसलाई (उनका सामुन्ने) पेश गरिनेछ ।

وَلَوْلَا نِعْمَةُ رَبِّي لَكُنتُ مِنَ الْمُحْضَرِينَ ﴿٥٨﴾

५९. हामीले (फेरी) मर्नुछैन भन्ने कुरा (के वास्तवमा ठिक) होइन त,

أَفَمَا نَحْنُ بِمَيِّتِينَ ﴿٥٩﴾

६०. "हाम्रो पहिलो मृत्युलाई छाडी, तथा

إِلَّا مَوْتَتَنَا الْأُولَىٰ وَمَا نَحْنُ بِمُعَذَّبِينَ ﴿٦٠﴾

---

के हुनेछ भने, अति संरक्षित र अति सुरक्षित अवस्थामा राखिएको स्वर्गको गौरव ।

हामीलाई कुनै दण्ड दिइनेछैन ?"

إِنَّ هَٰذَا لَهُوَ الْفَوْزُ الْعَظِيمُ ﴿٦١﴾

६१. "निश्चय नै त्यो ठूलो कृतकार्यता रहेको छ ।

لِمِثْلِ هَٰذَا فَلْيَعْمَلِ الْعَامِلُونَ ﴿٦٢﴾

६२. अतः कार्य गर्नेहरूले त्यही प्राप्तिका निम्ति कार्य गर्नु उचित हुन्छ ।"

أَذَٰلِكَ خَيْرٌ نُّزُلًا أَمْ شَجَرَةُ الزَّقُّومِ ﴿٦٣﴾

६३. आतिथ्यस्वरूप त्यो उत्तम रहेको छ, अथवा जकूमको (सिउंडीका) वृक्ष?

إِنَّا جَعَلْنَاهَا فِتْنَةً لِّلظَّالِمِينَ ﴿٦٤﴾

६४. वस्तुतः त्यो (वृक्ष) अत्याचारीहरूको परीक्षास्वरूप हामीले बनाएका हौं ।

إِنَّهَا شَجَرَةٌ تَخْرُجُ فِي أَصْلِ الْجَحِيمِ ﴿٦٥﴾

६५. निश्चय नै त्यो एउटा यस्तो वृक्ष हो जो नर्कका धरातलमा उम्रन्छ,

طَلْعُهَا كَأَنَّهُ رُءُوسُ الشَّيَاطِينِ ﴿٦٦﴾

६६. त्यसको फल यस्तो हुन्छ मानौं त्यो सर्पका टाउकाहरू हुन् ।

فَإِنَّهُمْ لَآكِلُونَ مِنْهَا فَمَالِئُونَ مِنْهَا الْبُطُونَ ﴿٦٧﴾

६७. तथा तिनीहरूले त्यसैबाट खानेछन् र (आफ्नो) पेट त्यसैले भर्नेछन् ।

ثُمَّ إِنَّ لَهُمْ عَلَيْهَا لَشَوْبًا مِّنْ حَمِيمٍ ﴿٦٨﴾

६८. त्यसमाथि तिनीहरूलाई (पिउनका निम्ति) उम्लँदो पानी मिलाइएको पानी दिइनेछ ।

ثُمَّ إِنَّ مَرْجِعَهُمْ لَإِلَى الْجَحِيمِ ﴿٦٩﴾

६९. त्यसपछि निश्चयपूर्वक तिनीहरूको प्रत्यागमन नर्कतर्फ हुनेछ ।

إِنَّهُمْ أَلْفَوْا آبَاءَهُمْ ضَالِّينَ ﴿٧٠﴾

७०. तिनीहरूले आफ्ना पुर्खालाई पथभ्रष्ट पाएका थिए,

فَهُمْ عَلَىٰ آثَارِهِمْ يُهْرَعُونَ ﴿٧١﴾

७१. तथा तिनीहरू पनि उनीहरूकै पाइला पछ्याउँदै हिँड्न लागे ।

وَلَقَدْ ضَلَّ قَبْلَهُمْ أَكْثَرُ الْأَوَّلِينَ ﴿٧٢﴾

७२. तथा तिनीहरूभन्दा पहिला धेरैजसो प्राचीन जातिहरू (मानिसहरू) पथभ्रष्ट भएका थिए,

وَلَقَدْ أَرْسَلْنَا فِيهِم مُّنذِرِينَ ﴿٧٣﴾

७३. तथा निश्चय नै तिनीहरूमा हामीले सावधानकर्ताहरू पठाएका थियौं ।

فَانظُرْ كَيْفَ كَانَ عَاقِبَةُ الْمُنذَرِينَ ﴿٧٤﴾

७४. अतः सुन, जसलाई सावधान गरिएको थियो तिनीहरूको अन्त कस्तो (नराम्रो) भएको थियो,

إِلَّا عِبَادَ اللَّهِ الْمُخْلَصِينَ ﴿٧٥﴾

७५. अल्लाहका निर्वाचित सेवकहरूबाहेक

وَلَقَدْ نَادَانَا نُوحٌ فَلَنِعْمَ الْمُجِيبُونَ ﴿٧٦﴾

७६. तथा निश्चय नै नूहले हामीलाई पुकारेका थिए, तथा हामीले -उनको प्रार्थनाको) कति नै उत्तम उत्तर दिएका थियौं

وَنَجَّيْنَاهُ وَأَهْلَهُ مِنَ الْكَرْبِ الْعَظِيمِ ﴿٧٧﴾

७७. तथा हामीले उनलाई र उनका परिवारलाई ठूलो सङ्कटबाट बचाएका थियौं,

وَجَعَلْنَا ذُرِّيَّتَهُ هُمُ الْبَاقِينَ ﴿٧٨﴾

७८. तथा केवल उनकै सन्तान सन्ततिलाई हामीले संसारमा बाँकी राखेका थियौं ।

وَتَرَكْنَا عَلَيْهِ فِي الْآخِرِينَ ﴿٧٩﴾

७९. तथा परवर्ती पुस्ताहरूमा हामीले उनको (कीर्ति) कायम राखेका थियौं ।

سَلَامٌ عَلَىٰ نُوحٍ فِي الْعَالَمِينَ ﴿٨٠﴾

८०. "सम्पूर्ण (जातिहरूमध्ये) संसारमा नूहप्रति शान्ति वर्षण होस् ।"

إِنَّا كَذَٰلِكَ نَجْزِي الْمُحْسِنِينَ ﴿٨١﴾

८१. पुण्यकर्म गर्ने व्यक्तिहरूलाई वस्तुतः हामी यसै प्रकार प्रतिदान दिने गर्छौं ।

إِنَّهُ مِنْ عِبَادِنَا الْمُؤْمِنِينَ ﴿٨٢﴾

८२. उनी निश्चय नै हाम्रा विश्वासी सेवकहरूमध्ये (एक) थिए ।

ثُمَّ أَغْرَقْنَا الْآخَرِينَ ﴿٨٣﴾

८३. त्यसपछि अन्य व्यक्तिहरूलाई हामीले डुबाएका थियौं ।

وَإِنَّ مِن شِيعَتِهِ لَإِبْرَاهِيمَ ﴿٨٤﴾

८४. तथा इब्राहिम पनि वस्तुतः उनकै जमातका एक व्यक्ति थिए,

إِذْ جَآءَ رَبَّهُۥ بِقَلْبٍ سَلِيمٍ

८५. जब उनी एउटा आज्ञाकारी (विनीत) हृदयका साथ आफ्ना प्रतिपालकसमक्ष आए,

إِذْ قَالَ لِأَبِيهِ وَقَوْمِهِۦ مَاذَا تَعْبُدُونَ

८६. तब उनले आफ्ना पिता र आफ्ना जाति (का मानिसहरू)लाई भने, "तिमीहरू कुन वस्तुको उपासना गर्छौ?

أَئِفْكًا ءَالِهَةً دُونَ ٱللَّهِ تُرِيدُونَ

८७. के तिमीहरू अल्लाहलाई छाडी मिथ्या कुराहरूलाई उपास्य (बनाउन) चाहन्छौ?

فَمَا ظَنُّكُم بِرَبِّ ٱلْعَٰلَمِينَ

८८. अतः विश्वब्रमाण्डका स्वामीका सम्बन्धमा तिमीहरूको के धारणा रहेको छ त?"

فَنَظَرَ نَظْرَةً فِى ٱلنُّجُومِ

८९. त्यसपछि उनले ताराहरूतर्फ दृष्टि गरे,

فَقَالَ إِنِّى سَقِيمٌ

९०. तथा भने, "वस्तुतः म अस्वस्थ (अनुभव गरिरहेको) छु।"

فَتَوَلَّوْا۟ عَنْهُ مُدْبِرِينَ

९१. अतः तिनीहरू पिठ्यूँ देखाएर उनीबाट बिदा भए।

فَرَاغَ إِلَىٰٓ ءَالِهَتِهِمْ فَقَالَ أَلَا تَأْكُلُونَ

९२. त्यसपछि उनी तिनीहरूका उपास्यहरूसमक्ष लुक्दै छिप्दै पुगे र भने, "के तिमीहरू केही खाँदैनौ?

مَا لَكُمْ لَا تَنطِقُونَ

९३. तिमीहरूलाई के भएको छ र तिमीहरू बोल्दैनौ?"

فَرَاغَ عَلَيْهِمْ ضَرْبًۢا بِٱلْيَمِينِ

९४. त्यसपछि उनले अकस्मात् दाहिने हातले तिनीहरूमाथि प्रहार गर्न लागे।

فَأَقْبَلُوٓا۟ إِلَيْهِ يَزِفُّونَ

९५. त्यही बेला मानिसहरू तिनीतर्फ दगुर्दै आउन लागे,

قَالَ أَتَعْبُدُونَ مَا تَنْحِتُونَ

९६. उनले भने, "के तिमीहरू (स्वयम्) आफ्नै हातले कुँदेर बनाएका वस्तुहरूको

उपासना गर्छौं,"

९७. "वस्तुत: जब तिमीहरूलाई र तिमीहरूका हातले गर्ने कार्यहरूलाई अल्लाहले नै सृष्टि गरेका हुन्?"

وَاللّٰهُ خَلَقَكُمْ وَمَا تَعْمَلُوْنَ ﴿٩٦﴾

९८. तिनीहरूले भने, "त्यसका निम्ति एउटा भवन (ढाँचा) खडा गर तथा त्यसलाई अग्निमा हाल ।"

قَالُوا ابْنُوْا لَهٗ بُنْيَانًا فَاَلْقُوْهُ فِي الْجَحِيْمِ ﴿٩٧﴾

९९. यसप्रकार तिनीहरूले उनीविरुद्ध एउटा कु- योजना बनाउने निश्चय गरे, परन्तु हामीले तिनीहरूलाई पूर्णरूपमा अपमानित तुल्यायौं ।

فَاَرَادُوْا بِهٖ كَيْدًا فَجَعَلْنٰهُمُ الْاَسْفَلِيْنَ ﴿٩٨﴾

१००. तथा उनले भने, "म मेरा प्रतिपालकका शरणमा जाँदैछु, उनैले मलाई मार्ग देखाउनेछन् ।"

وَقَالَ اِنِّيْ ذَاهِبٌ اِلٰى رَبِّيْ سَيَهْدِيْنِ ﴿٩٩﴾

१०१. "हे मेरा प्रतिपालक, मलाई एउटा धर्मनिष्ठ (पुत्र) प्रदान गर ।"

رَبِّ هَبْ لِيْ مِنَ الصّٰلِحِيْنَ ﴿١٠٠﴾

१०२. अत: हामीले उनलाई एउटा संयमशील पुत्रको शुभसन्देश प्रदान गर्‍यौं ।

فَبَشَّرْنٰهُ بِغُلٰمٍ حَلِيْمٍ ﴿١٠١﴾

१०३. तथा जब ती उनीसित मिलेर कार्य गर्ने योग्य उमेरमा पुगे, उनले भने, "हे मेरा प्रिय पुत्र, मैले एउटा सपनामा तिमीलाई (स्वयम्) वध गर्दै गरेको देखेको छु । अत: (यसबारे) तिम्रो के धारणा रहेको छ तिमी भन ।" उनले भने, "हे मेरा पिता, तपाईंलाई जुन आदेश दिइएको छ, त्यसैअनुसार कार्य गर्नोस्, यदि अल्लाहले चाहेमा, मलाई तपाईंले धैर्यशील व्यक्तिहरूमध्ये (एक) पाउनु हुनेछ ।"

فَلَمَّا بَلَغَ مَعَهُ السَّعْيَ قَالَ يٰبُنَيَّ اِنِّيْ اَرٰى فِي الْمَنَامِ اَنِّيْ اَذْبَحُكَ فَانْظُرْ مَاذَا تَرٰى ۚ قَالَ يٰاَبَتِ افْعَلْ مَا تُؤْمَرُ ۖ سَتَجِدُنِيْ اِنْ شَاۤءَ اللّٰهُ مِنَ الصّٰبِرِيْنَ ﴿١٠٢﴾

१०४. तथा जब तिनीहरू दुबै (अल्लाहको इच्छानुसार) कार्य गर्न तत्पर भए तथा उनले उनलाई (धर्तीमा) घोप्टो पारी

فَلَمَّآ اَسْلَمَا وَتَلَّهٗ لِلْجَبِيْنِ ﴿١٠٣﴾

लडाए,

| | |
|---|---|
| १०५. हामीले उनलाई बोलाएर भन्यौ, "हे इब्राहिम, | وَنَادَيْنٰهُ اَنْ يّٰۤاِبْرٰهِيْمُ ۙ﴿۱۰۵﴾ |
| १०६. "तिमीले आफ्नो सपना( को तात्पर्य) पूर्ण गर्‍यौ ।" यसै प्रकार हामी पुण्यकार्य गर्ने व्यक्तिहरूलाई प्रतिदान प्रदान गर्ने गर्छौं । | قَدْ صَدَّقْتَ الرُّءْيَا ۚ اِنَّا كَذٰلِكَ نَجْزِى الْمُحْسِنِيْنَ ﴿۱۰۶﴾ |
| १०७. त्यो निश्चय नै एउटा ठूलो परीक्षा थियो । | اِنَّ هٰذَا لَهُوَ الْبَلٰٓؤُا الْمُبِيْنُ ﴿۱۰۷﴾ |
| १०८. तथा एउटा ठूलो बलिद्वारा हामीले उनलाई उद्धार गर्‍यौं । | وَفَدَيْنٰهُ بِذِبْحٍ عَظِيْمٍ ﴿۱۰۸﴾ |
| १०९. तथा परवर्ती पुस्ताहरूमा हामीले उनको (सुख्याति) कायम राख्यौं – | وَتَرَكْنَا عَلَيْهِ فِى الْاٰخِرِيْنَ ۖ﴿۱۰۹﴾ |
| ११०. "इब्राहिममाथि शान्ति वर्षण भइरहोस !" | سَلٰمٌ عَلٰۤى اِبْرٰهِيْمَ ﴿۱۱۰﴾ |
| १११. पुण्यकार्य गर्ने व्यक्तिहरूलाई हामी यसै प्रकार प्रतिदान दिने गर्छौं । | كَذٰلِكَ نَجْزِى الْمُحْسِنِيْنَ ﴿۱۱۱﴾ |
| ११२. उनी निश्चयपूर्वक हाम्रा विश्वासी सेवकहरूमध्ये (एक) थिए । | اِنَّهٗ مِنْ عِبَادِنَا الْمُؤْمِنِيْنَ ﴿۱۱۲﴾ |
| ११३. तथा हामीले उनलाई इस्हाकको (समेत) शुभसन्देश दिएका थियौं, जो एकजना नबी (सिद्ध), र धर्मनिष्ठ व्यक्तिहरू मध्ये( एक) थिए । | وَبَشَّرْنٰهُ بِاِسْحٰقَ نَبِيًّا مِّنَ الصّٰلِحِيْنَ ﴿۱۱۳﴾ |
| ११४. तथा हामीले उनीमाथि र इस्हाकमाथि कृपावर्षण गर्‍यौं । तथा तिनीहरू दुबैका वंशमा धेरै व्यक्तिहरू पुण्यकर्मी छन् भने, स्वयम्माथि स्पष्टरुपमा | وَبٰرَكْنَا عَلَيْهِ وَعَلٰۤى اِسْحٰقَ ۭ وَمِنْ ذُرِّيَّتِهِمَا مُحْسِنٌ وَّظَالِمٌ لِّنَفْسِهٖ مُبِيْنٌ ﴿۱۱۳﴾ |

कठोर* व्यवहार गर्ने व्यक्तिहरू पनि रहेका छन् ।

وَلَقَدْ مَنَنَّا عَلٰى مُوْسٰى وَ هٰرُوْنَ ﴿١١٤﴾

११४. तथा मूसा र हारुनमाथि (पनि) हामीले वास्तवमा अनुग्रह गरेका थियौं ।

وَ نَجَّيْنٰهُمَا وَ قَوْمَهُمَا مِنَ الْكَرْبِ الْعَظِيْمِ ﴿١١٥﴾

११६. तथा हामीले तिनीहरू दुबैलाई र तिनीहरूका मानिसहरूलाई ठूलो क्लेश बाट बचाएका थियौं,

وَ نَصَرْنٰهُمْ فَكَانُوْا هُمُ الْغٰلِبِيْنَ ﴿١١٦﴾

११७. तथा हामीले तिनीहरूलाई सहयोग गऱ्यौं, फलस्वरूप तिनीहरू विजयी हुन पुगे ।

وَاٰتَيْنٰهُمَا الْكِتٰبَ الْمُسْتَبِيْنَ ﴿١١٧﴾

११८. तथा हामीले तिनीहरूलाई स्पष्टरूपमा वर्णन गर्ने पुस्तक प्रदान गऱ्यौं,

وَهَدَيْنٰهُمَا الصِّرَاطَ الْمُسْتَقِيْمَ ﴿١١٨﴾

११९. तथा हामीले तिनीहरूलाई सन्मार्गतर्फ पथ प्रदर्शन गरेका थियौं ।

وَتَرَكْنَا عَلَيْهِمَا فِى الْاٰخِرِيْنَ ﴿١١٩﴾

१२०. तथा परवर्ती पुस्ताहरूमा हामीले तिनीहरूको (सुख्याति) कायम राखेका

---

* जालिम ( ظَالِمٌ ) (कठोर) अथवा जुल्म (कठोरता) शब्द पवित्र कुरानमा विशिष्टताबिनै सधैं तिरस्कार वा निन्दास्वरुप प्रयोग भएको छैन । जब त्यसलाई उक्त भावार्थमा प्रयोग गरिन्छ त्यसले सन्मार्गबाट पथभ्रष्टता (दूरत्व अवलम्बनतर्फ) का सबै प्रकारका गुणहरूलाई बुझाउँछ । यसबाहेक, केही विशेष स्थानहरूमा (विशिष्टताका साथ) यो शब्द प्रशंसनीयता प्रकट गर्न पनि प्रयोग हुन्छ ।

३५:३३ (अल् फातिर) मा यसको प्रमाणस्वरुप अल्लाहले आफ्ना निर्वाचित भृत्यहरूमध्ये केहीलाई त्यसमा सामेल गरेका छन्, त्यस्ता व्यक्तिहरू अर्थात् जालिमुन् लिनफ्सिहि ( ظالم لنفسه) तिनै हुन्, जसले अल्लाहका मार्गमा संघर्ष गर्दा स्वयम्माथि कठोरता (अत्याचार) गर्छन् । त्यही श्रेणीमा तुलनात्मक उच्च वर्गका व्यक्तिहरूको भने मुकतासिद् ( مُقْتَصِد) तथा साबिक् बिल खैरात् (अल्-फातिर परिच्छेद ३५ आयत ३३) भनी उल्लेख गरिएको छ । यसै प्रकार, आध्यात्मिक संघर्षको प्रारम्भिक स्तरमा एउटा व्यक्तिलाई सत्कर्मको अभ्यास गराउन एउटा कठोरता र निर्ममतापूर्ण युक्ति अपनाउनु पर्ने हुन्छ । जुन व्यक्तिहरूले अल्लाहको (प्रसन्नता प्राप्ति)का निम्ति त्यसो गर्छन् तिनीहरू निस्सन्देह प्रशंसानीय हुन्छन् तथापि तिनीहरूलाई जालिमुन् लिनफ्सिहि (ظالم لنفسه) (स्वयम्माथि कठोर व्यवहार गर्ने) भनिन्छ ।

थियौं–

१२१. “मूसा र हारुनमाथि (सदा) शान्ति वर्षण भइरहोस् ।”

سَلٰمٌ عَلٰى مُوْسٰى وَهٰرُوْنَ ﴿١٢١﴾

१२२. पुण्यकर्म गर्ने व्यक्तिहरूलाई हामी यसै प्रकार प्रतिदान प्रदान गर्ने गर्छौं ।

اِنَّا كَذٰلِكَ نَجْزِى الْمُحْسِنِيْنَ ﴿١٢٢﴾

१२३. तिनीहरू दुबै निश्चयपूर्वक हाम्रा विश्वासी सेवकहरू थिए ।

اِنَّهُمَا مِنْ عِبَادِنَا الْمُؤْمِنِيْنَ ﴿١٢٣﴾

१२४. तथा इल्यास (पनि) निस्सन्देह सन्देशवाहकहरूमध्ये (एक) थिए,

وَاِنَّ اِلْيَاسَ لَمِنَ الْمُرْسَلِيْنَ ﴿١٢٤﴾

१२५. जब उनले आफ्ना मानिसहरूलाई भने, “के तिमीहरू अल्लाहसित डराउँदैनौ?

اِذْ قَالَ لِقَوْمِهٖٓ اَلَا تَتَّقُوْنَ ﴿١٢٥﴾

१२६. “के तिमीहरू बा- ल्लाई पुकार्छौ, तथा सर्वोत्कृष्ट सृष्टिकर्तालाई भने त्यागछौ,

اَتَدْعُوْنَ بَعْلًا وَّتَذَرُوْنَ اَحْسَنَ الْخَالِقِيْنَ ﴿١٢٦﴾

१२७. “(अर्थात्) अल्लाहलाई, जो तिमीहरूका प्रतिपालक हुन्, तथा तिमीहरूका पहिलाका पुर्खाहरूका (पनि) (उनी नै) प्रतिपालक हुन्?

اللّٰهَ رَبَّكُمْ وَرَبَّ اٰبَآئِكُمُ الْاَوَّلِيْنَ ﴿١٢٧﴾

१२८. परन्तु तिनीहरूले उनीसित मिथ्यावादीसरह व्यवहार गरे, तथा तिनीहरूलाई (आफ्नो कर्मको हिसाब दिनका निम्ति) अवश्य (अल्लाहसमक्ष) पेश गरिनेछ,

فَكَذَّبُوْهُ فَاِنَّهُمْ لَمُحْضَرُوْنَ ﴿١٢٨﴾

१२९. केवल अल्लाहका निर्वाचित सेवकहरूबाहेक ।

اِلَّا عِبَادَ اللّٰهِ الْمُخْلَصِيْنَ ﴿١٢٩﴾

१३०. तथा परवर्ती पुस्ताहरूमा हामीले उनको (सुख्याति) कायम राखेका थियौं–

وَتَرَكْنَا عَلَيْهِ فِى الْاٰخِرِيْنَ ﴿١٣٠﴾

१३१. “इल्यास (र उनका मानिसहरू) माथि शान्ति वर्षण भइरहोस् ।”

سَلٰمٌ عَلٰٓى اِلْ يَاسِيْنَ ﴿١٣١﴾

إِنَّا كَذَٰلِكَ نَجْزِي الْمُحْسِنِينَ ﴿١٣١﴾

१३२. पुण्यकर्म गर्ने व्यक्तिहरूलाई हामी यसै प्रकार प्रतिदान प्रदान गर्ने गर्छौं ।

إِنَّهُ مِنْ عِبَادِنَا الْمُؤْمِنِينَ ﴿١٣٢﴾

१३३. उनी निश्चय नै हाम्रा विश्वासी सेवकहरूमध्ये (एक) थिए ।

وَإِنَّ لُوطًا لَمِنَ الْمُرْسَلِينَ ﴿١٣٣﴾

१३४. तथा लूत (पनि) निस्सन्देह सन्देशवाहकहरूमध्ये - एक) थिए,

إِذْ نَجَّيْنَاهُ وَأَهْلَهُ أَجْمَعِينَ ﴿١٣٤﴾

१३५. जब हामीले उनको र उनका सम्पूर्ण परिवारको उद्धार गरेका थियौं,

إِلَّا عَجُوزًا فِي الْغَابِرِينَ ﴿١٣٥﴾

१३६. सिवाय एउटी वृद्ध महिलाबाहेक (जो पछि) रहने व्यक्तिहरूमा सामेल (थिइन्) ।

ثُمَّ دَمَّرْنَا الْآخَرِينَ ﴿١٣٦﴾

१३७. त्यसपछि हामीले अन्य व्यक्तिहरूलाई पूर्णरूपमा ध्वस्त पारेका थियौं ।

وَإِنَّكُمْ لَتَمُرُّونَ عَلَيْهِمْ مُصْبِحِينَ ﴿١٣٧﴾

१३८. त्था तिनीहरू (रहेका स्थानबाट) तिमीहरू निश्चयपूर्वक बिहानीपख आउ-जाउ गर्ने गर्छौ,

وَبِاللَّيْلِ ۚ أَفَلَا تَعْقِلُونَ ﴿١٣٨﴾

१३९. त्था रात्रि समयमा (पनि) । अत: किन तिमीहरू बुझ्दैनौ?

وَإِنَّ يُونُسَ لَمِنَ الْمُرْسَلِينَ ﴿١٣٩﴾

१४०. तथा यूनुस (जोना: पनि) निश्चय नै सन्देशवाहकहरूमध्ये - एक) थिए,

إِذْ أَبَقَ إِلَى الْفُلْكِ الْمَشْحُونِ ﴿١٤٠﴾

१४१. जब उनी पूर्णरूपले भरिएको जहाज (नाउ)तर्फ दगुर्दै गए,

فَسَاهَمَ فَكَانَ مِنَ الْمُدْحَضِينَ ﴿١٤١﴾

१४२. तथा - जहाजका आफ्ना सहयात्रीहरूसित मिलेर) उनले चिट्ठा काटे, फलस्वरूप उनी धकेलिइने व्यक्तिहरूमा सामेल भए ।

فَالْتَقَمَهُ الْحُوتُ وَهُوَ مُلِيمٌ ﴿١٤٢﴾

१४३. तथा उनले (स्वयम्लाई) धिक्कारी रहेको अवस्थामा एउटा माछाले उनलाई निल्यो ।

فَلَوْلَآ أَنَّهُۥ كَانَ مِنَ ٱلْمُسَبِّحِينَ ﴿١٤٣﴾

१४४. तथा यदि उनी (अल्लाहको) गुणगान गर्ने व्यक्तिहरूमध्ये नरहेका भए,

لَلَبِثَ فِى بَطْنِهِۦٓ إِلَىٰ يَوْمِ يُبْعَثُونَ ﴿١٤٤﴾

१४५. पुनरुत्थानका दिनसम्म उनी माछाको पेटभित्रै रहिरहने थिए ।

فَنَبَذْنَٰهُ بِٱلْعَرَآءِ وَهُوَ سَقِيمٌ ﴿١٤٥﴾

१४६. त्यसपछि हामीले उनलाई एउटा खुल्ला भूमिमा लडायौं र उनी अस्वस्थ थिए,

وَأَنۢبَتْنَا عَلَيْهِ شَجَرَةً مِّن يَقْطِينٍ ﴿١٤٦﴾

१४७. तथा उनका निकटमा हामीले एउटा फर्सीको बोट उमार्‍यौं ।

وَأَرْسَلْنَٰهُ إِلَىٰ مِا۟ئَةِ أَلْفٍ أَوْ يَزِيدُونَ ﴿١٤٧﴾

१४८. तथा हामीले उनलाई एकलाख अथवा त्योभन्दा अधिक (व्यक्तिहरू)तर्फ सन्देशवाहक बनाएर पठायौं,

فَـَٔامَنُوا۟ فَمَتَّعْنَٰهُمْ إِلَىٰ حِينٍ ﴿١٤٨﴾

१४९. तथा तिनीहरूले विश्वास स्थापना गरे, त्यसकारण केही समयका निम्ति हामीले तिनीहरूलाई जीवनवृति (जीविका) प्रदान गर्‍यौं ।

فَٱسْتَفْتِهِمْ أَلِرَبِّكَ ٱلْبَنَاتُ وَلَهُمُ ٱلْبَنُونَ ﴿١٤٩﴾

१५०. अत: तिनीहरूलाई सोध के तिम्रा प्रतिपालकका चाहिँ छोरीहरू छन् र तिनीहरूका भने छोराहरू ।"

أَمْ خَلَقْنَا ٱلْمَلَٰٓئِكَةَ إِنَٰثًا وَهُمْ شَٰهِدُونَ ﴿١٥٠﴾

१५१. के फरिस्ताहरूलाई तिनीहरूका सामुन्ने हामीले स्त्रीहरूस्वरूप सृष्टि गरेका थियौं ?

أَلَآ إِنَّهُم مِّنْ إِفْكِهِمْ لَيَقُولُونَ ﴿١٥١﴾

१५२. सुन, तिनीहरू निश्चय नै एउटा मनगढन्त कुरा गर्छन्,।

وَلَدَ ٱللَّهُ وَإِنَّهُمْ لَكَٰذِبُونَ ﴿١٥٢﴾

१५३. "अल्लाहले (आफ्नै छोराछोरी) जन्माएका छन्;" (भन्ने कुरा) तथा तिनीहरू निश्चयपूर्वक मिथ्यावादी रहेका छन् ।

أَصْطَفَى ٱلْبَنَاتِ عَلَى ٱلْبَنِينَ ﴿١٥٣﴾

१५४. के उनले छोराहरूको सट्टा छोरीहरू

चुनेका छन् ?

مَا لَكُمْ كَيْفَ تَحْكُمُوْنَ ﴿١٥٥﴾

१५५. तिमीहरूलाई के भएको छ? यो तिमीहरूको कस्तो निर्णय हो?

اَفَلَا تَذَكَّرُوْنَ ﴿١٥٦﴾

१५६. अतः के तिमीहरू चिन्तन मनन गर्दैनौ त?

اَمْ لَكُمْ سُلْطٰنٌ مُّبِيْنٌ ﴿١٥٧﴾

१५७. अथवा के तिमीहरूसित कुनै स्पष्ट ज्ञान (प्रमाण) छ?

فَاْتُوْا بِكِتٰبِكُمْ اِنْ كُنْتُمْ صٰدِقِيْنَ ﴿١٥٨﴾

१५८. यदि तिमीहरू साँचा हौ भने आफ्नो पुस्तक प्रस्तुत गर ।

وَجَعَلُوْا بَيْنَهٗ وَبَيْنَ الْجِنَّةِ نَسَبًا ۭ وَلَقَدْ عَلِمَتِ الْجِنَّةُ اِنَّهُمْ لَمُحْضَرُوْنَ ﴿١٥٩﴾

१५९. तथा उनका (अल्लाहका) र जिन्नहरूका बीचमा रक्तसम्बन्ध रहेको छ भनी तिनीहरू जोड दिएर भन्छन्, वस्तुतः जिन्नहरूले तिनीहरूलाई (समेत) (उनका जुनाफमा) उपस्थित गरिनेछ भन्ने कुरा राम्ररी जान्दछन्

سُبْحٰنَ اللّٰهِ عَمَّا يَصِفُوْنَ ﴿١٦٠﴾

१६०. अल्लाह परम पवित्र छन् (तथा उनका सम्वन्धमा) तिनीहरूले गर्ने गरेका कुराहरूबाट उनी (पूर्ण निर्दोष) छन् ।

اِلَّا عِبَادَ اللّٰهِ الْمُخْلَصِيْنَ ﴿١٦١﴾

१६१. सिवाय अल्लाहले चुनेका सेवकहरूबाहेक - तिनीहरूले त्यसो गर्दैनन्।

فَاِنَّكُمْ وَمَا تَعْبُدُوْنَ ﴿١٦٢﴾

१६२. वस्तुतः तिमीहरू र ती (वस्तुहरू) जसको तिमीहरू उपासना गर्छौ–

مَآ اَنْتُمْ عَلَيْهِ بِفٰتِنِيْنَ ﴿١٦٣﴾

१६३. उनीविरुद्ध तिमीहरूमध्ये कसैले (कसैलाई) कुमार्गतर्फ लैजान सक्दैनौ,,

اِلَّا مَنْ هُوَ صَالِ الْجَحِيْمِ ﴿١٦٤﴾

१६४. सिवाय त्यस व्यक्तिबाहेक जो नर्कमा जल्नेछ ।

وَمَا مِنَّآ اِلَّا لَهٗ مَقَامٌ مَّعْلُوْمٌ ﴿١٦٥﴾

१६५. (तथा फरिस्ताहरू भन्छन्): "हामीमध्ये प्रत्येकका निम्ति आ- आफ्नो

निर्धारित स्थान रहेको छ ।

وَّ إِنَّا لَنَحْنُ الصَّآفُّوْنَ ﴿١٦٥﴾

१६६. तथा वस्तुत:, हामी पंक्तिवद्ध खडा छौं ।

وَإِنَّا لَنَحْنُ الْمُسَبِّحُوْنَ ﴿١٦٦﴾

१६७. तथा हामी (अल्लाहको) गुणगान गर्ने गर्छौं ।"

وَإِنْ كَانُوْا لَيَقُوْلُوْنَ ﴿١٦٧﴾

१६८. तथा निश्चयपूर्वक तिनीहरू के भन्ने गर्थे भने,

لَوْ أَنَّ عِنْدَنَا ذِكْرًا مِّنَ الْأَوَّلِيْنَ ﴿١٦٨﴾

१६९. यदि पहिलाका मानिसहरूको (जस्तो) हामीसित पनि कुनै पुस्तक रहेको भए,

لَكُنَّا عِبَادَ اللّٰهِ الْمُخْلَصِيْنَ ﴿١٦٩﴾

१७०. हामी अवश्य अल्लाहले चुनेका सेवकहरू बन्नेथियौं ।"

فَكَفَرُوْا بِهٖ فَسَوْفَ يَعْلَمُوْنَ ﴿١٧٠﴾

१७१. तथापि जब तिनीहरूसमक्ष त्यसको आगमन हुन्छ, तिनीहरू त्यसप्रति अविश्वास गर्छन्, परन्तु शीघ्र नै तिनीहरूले जान्नेछन् ।

وَلَقَدْ سَبَقَتْ كَلِمَتُنَا لِعِبَادِنَا الْمُرْسَلِيْنَ ﴿١٧١﴾

१७२. तथा हाम्रा सन्देशवाहक सेवकहरूका सम्बन्धमा निश्चय नै हाम्रो निर्णय (वचन) भइसकेको छ,

إِنَّهُمْ لَهُمُ الْمَنْصُوْرُوْنَ ﴿١٧٢﴾

१७३. त्यो के हो भने, तिनीहरूको निश्चयपूर्वक सहयोग गरिनेछ,

وَإِنَّ جُنْدَنَا لَهُمُ الْغٰلِبُوْنَ ﴿١٧٣﴾

१७४. तथा हाम्रो लस्कर नै निश्चयपूर्वक विजयी रहनेछ ।

فَتَوَلَّ عَنْهُمْ حَتّٰى حِيْنٍ ﴿١٧٤﴾

१७५. अत: केही समयका निम्ति तिमी तिनीहरूबाट अलग होउ ।

وَّأَبْصِرْهُمْ فَسَوْفَ يُبْصِرُوْنَ ﴿١٧٥﴾

१७६. तथा तिनीहरूमाथि दृष्टि राख्दै गर, (किनकि) तिनीहरूले (पनि) शीघ्र नै देख्नेछन् ।

أَفَبِعَذَابِنَا يَسْتَعْجِلُوْنَ ﴿١٧٦﴾

१७७. अत: के तिनीहरू हाम्रो दण्ड शीघ्र

नै आओस् भन्ने कामना गर्छन् ?

فَإِذَا نَزَلَ بِسَاحَتِهِمْ فَسَاءَ صَبَاحُ الْمُنْذَرِينَ ﴿١٧٧﴾

१७८. परन्तु जब त्यो तिनीहरूको आँगनमा अवतीर्ण हुनेछ, (तब) सावधान गरिएका व्यक्तिहरूको बिहानी अति नै निकृष्ट हुनेछ

وَتَوَلَّ عَنْهُمْ حَتَّىٰ حِينٍ ﴿١٧٨﴾

१७९. अत: केही समयका निम्ति तिमी तिनीहरूबाट विमुख होउ ।

وَأَبْصِرْ فَسَوْفَ يُبْصِرُونَ ﴿١٧٩﴾

१८०. तथा हेर्दै गर, तिनीहरूले पनि शीघ्र नै देख्नेछन् ।

سُبْحَانَ رَبِّكَ رَبِّ الْعِزَّةِ عَمَّا يَصِفُونَ ﴿١٨٠﴾

१८१. सम्पूर्ण सम्मान (र शक्ति) का स्वामी तिम्रा प्रतिपालक, तिनीहरूले गढ्ने गरेका कुराहरूबाट धेरै माथि र परम पवित्र छन् ।

وَسَلَامٌ عَلَى الْمُرْسَلِينَ ﴿١٨١﴾

१८२. तथा सन्देशवाहकहरू माथि सदा शान्ति वर्षण भइरहनेछ ।

وَالْحَمْدُ لِلَّهِ رَبِّ الْعَالَمِينَ ﴿١٨٢﴾

१८३. तथा सम्पूर्ण प्रशंसा विश्व ब्रह्माण्डका प्रतिपालक अल्लाहकै निम्ति रहेको छ ।



## साद
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

صٓ وَالْقُرْاٰنِ ذِى الذِّكْرِ ②

२. साद* । उपदेशले परिपूर्ण कुरानको शपथ, यो हामीले अवतीर्ण गरेको वाणी हो

بَلِ الَّذِيْنَ كَفَرُوْا فِيْ عِزَّةٍ وَّ شِقَاقٍ ③

३. परन्तु अविश्वासी व्यक्तिहरू भने (मिथ्या) अहङ्कार र शत्रुतामा (मग्न) छन् ।

كَمْ اَهْلَكْنَا مِنْ قَبْلِهِمْ مِّنْ قَرْنٍ فَنَادَوْا وَّلَاتَ حِيْنَ مَنَاصٍ ④

४. तिनीहरूभन्दा पहिला हामीले कति नै पुस्ताहरूलाई ध्वस्त पार्‍यौं ! तिनीहरू (सहयोग प्राप्तिका निम्ति) चिच्च्याएका थिए, परन्तु तब बच्ने समय नै कहाँ (शेष) थियो र !

وَعَجِبُوْٓا اَنْ جَآءَهُمْ مُّنْذِرٌ مِّنْهُمْ ز وَقَالَ الْكٰفِرُوْنَ هٰذَا سٰحِرٌ كَذَّابٌ ⑤

५. तिनीहरूसमक्ष तिनीहरूमध्येकै एकजना सावधानकर्ता आयो भनी तिनीहरू अचम्मित हुन्छन्; तथा अविश्वासी व्यक्तिहरू भन्छन्, "यो ता एउटा जादुगर, (तथा) बडो झुट्टो - व्यक्ति) हो ।"

اَجَعَلَ الْاٰلِهَةَ اِلٰهًا وَّاحِدًا ۚ اِنَّ هٰذَا لَشَيْءٌ عُجَابٌ ⑥

६. "के त्यसले धेरै उपास्यहरूलाई एउटै उपास्यस्वरूप गढेको छ? यो ता (हामीले सुनेका कुराहरूमध्ये) एउटा अति अचम्मको कुरो हो ।"

وَانْطَلَقَ الْمَلَاُ مِنْهُمْ اَنِ امْشُوْا وَاصْبِرُوْا عَلٰٓى اٰلِهَتِكُمْ ۚ اِنَّ هٰذَا لَشَيْءٌ يُّرَادُ ⑦

७. तब तिनीहरूका मुखियाहरू (तिनीहरूलाई परामर्श दिँदै) विवाद गर्न लागे, "तिमीहरू गएर आफ्ना उपास्यहरू प्रति अडिग भएर बस । यो ता एउटा केवल मनोवाञ्छित कुरो हो ।

---

* परम सत्य अल्लाह !

مَا سَمِعْنَا بِهَٰذَا فِي الْمِلَّةِ الْآخِرَةِ إِنْ هَٰذَا إِلَّا اخْتِلَاقٌ ﴿٨﴾

८. अन्य कुनै धर्ममा हामीले यसप्रकारका कुरा कहिल्यै सुनेकाछैनौं । यो ता केवल एउटा मनगढन्त कुरो हो ।

أَأُنْزِلَ عَلَيْهِ الذِّكْرُ مِنْ بَيْنِنَا ۚ بَلْ هُمْ فِي شَكٍّ مِنْ ذِكْرِي ۖ بَلْ لَمَّا يَذُوقُوا عَذَابِ ﴿٩﴾

९. "हामी सबैलाई छाडी के त्यसैमाथि उपदेशग्रन्थ अवतीर्ण गरिएको छ त? " होइन, (अपितु) मेरो उपदेशप्रति नै तिनीहरू आशङ्कित छन् । होइन, अपितु तिनीहरूले अहिलेसम्म मेरो दण्ड चाखेकै छैनन् ।

أَمْ عِنْدَهُمْ خَزَائِنُ رَحْمَةِ رَبِّكَ الْعَزِيزِ الْوَهَّابِ ﴿١٠﴾

१०. के परम पराक्रमी, परम दानशील तिम्रा प्रतिपालकको करुणाको खजाना तिनीहरूसितै छ त?

أَمْ لَهُمْ مُلْكُ السَّمَاوَاتِ وَالْأَرْضِ وَمَا بَيْنَهُمَا ۖ فَلْيَرْتَقُوا فِي الْأَسْبَابِ ﴿١١﴾

११. अथवा के आकाशमण्डल र पृथ्वी तथा तिनीहरूका बीचमा रहेका सम्पूर्ण वस्तुहरूमाथि तिनीहरूकै राज रहेको छ त? यदि त्यसै हो भने तिनीहरू (आफ्ना सामर्थ्यअन्तर्गत रहेका) साधनहरूद्वारा माथि चढून् ।

جُنْدٌ مَا هُنَالِكَ مَهْزُومٌ مِنَ الْأَحْزَابِ ﴿١٢﴾

१२. (तिनीहरू वास्तवमा) संयुक्त लस्कर (हुन जो) त्यहाँबाट परास्त भएर भाग्नेछन्

كَذَّبَتْ قَبْلَهُمْ قَوْمُ نُوحٍ وَعَادٌ وَفِرْعَوْنُ ذُو الْأَوْتَادِ ﴿١٣﴾

१३. यसै प्रकार तिनीहरूभन्दा पहिला नूहका मानिसहरूले तथा आद (जाति) ले र शिविरका स्वामी फिरौनले अस्वीकार गरेका थिए;

وَثَمُودُ وَقَوْمُ لُوطٍ وَأَصْحَابُ الْأَيْكَةِ ۚ أُولَٰئِكَ الْأَحْزَابُ ﴿١٤﴾

१४. यसै प्रकार समूद (जाति) र लूतका मानिसहरू तथा अरण्य निवासीहरू, ती (सबै पराजय भोग्ने) समूहहरू थिए ।

إِنْ كُلٌّ إِلَّا كَذَّبَ الرُّسُلَ فَحَقَّ عِقَابِ ﴿١٥﴾

१५. तिनीहरू सबैले सम्मिलितरूपमा सन्देशवाहकहरूलाई अस्वीकार गरे, त्यसकारण मेरो दण्ड अटल हुनपुग्यो ।

१६. तथा यिनीहरू ता केवल एउटा यस्तो भयानक शब्दको प्रतीक्षामा छन् जसबाट कुनै छुट्कारा प्राप्त हुनेछैन ।

وَمَا يَنظُرُ هَٰٓؤُلَآءِ إِلَّا صَيْحَةً وَٰحِدَةً مَّا لَهَا مِن فَوَاقٍ ﴿١٥﴾

१७. तिनीहरू भन्छन्, "हे प्रतिपालक, हामीलाई हिसाव किताबको दिनभन्दा पहिला नै हाम्रो (दण्डको) भाग चाँडो देऊ ।"

وَقَالُوا۟ رَبَّنَا عَجِّل لَّنَا قِطَّنَا قَبْلَ يَوْمِ ٱلْحِسَابِ ﴿١٦﴾

१८. तिनीहरूका कुराहरूप्रति धैर्यधारण गर, तथा हाम्रा शक्तिशली सेवक दाऊदलाई याद गर; निश्चय नै उनी सदा (अल्लाहतर्फ) झुकिरहन्थे ।

ٱصْبِرْ عَلَىٰ مَا يَقُولُونَ وَٱذْكُرْ عَبْدَنَا دَاوُۥدَ ذَا ٱلْأَيْدِ ۖ إِنَّهُۥٓ أَوَّابٌ ﴿١٧﴾

१९. तथा हामीले पर्वतहरूलाई* (उनका) अधीनस्थ गरिदिएका थियौं । तिनीहरू उनीसित मिली सन्धयासमयमा र सूर्योदयका समयमा अल्लाहको प्रशंसा र गुणगान गर्थे ।

إِنَّا سَخَّرْنَا ٱلْجِبَالَ مَعَهُۥ يُسَبِّحْنَ بِٱلْعَشِىِّ وَٱلْإِشْرَاقِ ﴿١٨﴾

२०. तथा पक्षीहरूलाई** एकत्रित गरी हामीले उनका अधीनस्थ गरेका थियौं; ती सबै उनीप्रति समर्पित थिए ।

وَٱلطَّيْرَ مَحْشُورَةً ۖ كُلٌّ لَّهُۥٓ أَوَّابٌ ﴿١٩﴾

२१. तथा उनको राज्यलाई हामीले सुदृढ तुल्याएका थियौं, तथा उनलाई तत्वज्ञान र निर्णायात्मक वार्ता (गर्ने कौशल) प्रदान गरेका थियौं ।

وَشَدَدْنَا مُلْكَهُۥ وَءَاتَيْنَٰهُ ٱلْحِكْمَةَ وَفَصْلَ ٱلْخِطَابِ ﴿٢٠﴾

२२. तथा के तिमीलाई ती झगडियाहरूको घटना विवरण प्राप्त

وَهَلْ أَتَىٰكَ نَبَؤُا۟ ٱلْخَصْمِ إِذْ تَسَوَّرُوا۟ ٱلْمِحْرَابَ ﴿٢١﴾

---

* जिबाल् ( جِبَال ) (पर्वतहरू) शब्दको प्रयोग ती शक्तिशाली पर्वतीय जातिहरूका निम्ति रहेको छ जसलाई दाऊदले वशीभूत गरेका थिए, अथवा ती पर्वतीय खनिज सम्पत्तिहरूको वर्णन हुन सक्छ जसको प्रयोग उनका शासनकालमा प्रशस्त रुपमा भएको थियो ।

** अत्ताएर ( اَلطَّائِرُ ) (पक्षीहरू) को अर्थ ती असाधारण कौशल (बुद्धि) युक्त मानिसहरू हुन् जो आफ्नो कार्यसाध्यताको पङ्खद्वारा उच्चा उडान भर्ने गर्थे ।

भएको छ जब तिनीहरू पर्खाल नाघेर (उनको) भित्री कोठामा पुगेका थिए?–

२३. जब तिनीहरू दाऊदसमक्ष उपस्थित भए तब तिनीहरूलाई देखेर उनी भयभीत भए । तिनीहरूले भने, "तिमी नडराऊ । (हामीहरू) दुई विवादी पक्ष हौं; हामीमध्ये एउटा पक्षले अर्को पक्षमाथि अत्याचार गरेको छ; त्यसकारण तिमी हामीहरूका बीचमा न्यायका साथ निर्णय गर, तथा उचित कार्यविधिबाट विचलित नहोउ, र हामीलाई सन्मार्ग देखाउ ।

إِذْ دَخَلُوا عَلَىٰ دَاوُدَ فَفَزِعَ مِنْهُمْ قَالُوا لَا تَخَفْ ۚ خَصْمَانِ بَغَىٰ بَعْضُنَا عَلَىٰ بَعْضٍ فَاحْكُمْ بَيْنَنَا بِالْحَقِّ وَلَا تُشْطِطْ وَاهْدِنَا إِلَىٰ سَوَاءِ الصِّرَاطِ ﴿٢٢﴾

२४. "त्यो मेरो भाइ हो; उससित उनान्सय भेडीहरू छन्, तथा मसित एउटै मात्र भेडी छ । तथापि उ के भन्छ भने, "त्यो भेडी मलाई दे," तथा आफ्नो कुराले मलाई दबाएर राख्दै आएको छ ।"

إِنَّ هَٰذَا أَخِي ۚ لَهُ تِسْعٌ وَتِسْعُونَ نَعْجَةً وَلِيَ نَعْجَةٌ وَاحِدَةٌ ۚ فَقَالَ أَكْفِلْنِيهَا وَعَزَّنِي فِي الْخِطَابِ ﴿٢٣﴾

२५. (दाऊदले) भने, "उसले आफ्ना भेडीहरू हुँदा हुँदै तिम्रो भेडी समेत दावी गरेर तिमीमाथि निश्चय नै अन्याय गरेको छ । तथा धेरैजसो भागीदारहरू अवश्य यस्ता रहेका छन् जसले परस्पर एक-अर्कामाथि अन्याय गर्ने गर्छन्, सिवाय ती व्यक्तिहरू जसले (अल्लाहप्रति) विश्वास गर्छन्, तथा पुण्यकार्य गर्ने गर्छन्; तथा यस्ता व्यक्तिहरू अति नै थोरै छन् ।" तथा हामीले उनलाई जाँचेका थियौं भन्ने कुराको दाऊदलाई ज्ञान भयो । अतः उनले आफ्ना प्रतिपालकसित क्षमायाचना गरे, तथा साष्टाङ्ग दण्डवतका साथ प्रार्थना गर्दै उनीप्रति समर्पित हुन पुगे ।

قَالَ لَقَدْ ظَلَمَكَ بِسُؤَالِ نَعْجَتِكَ إِلَىٰ نِعَاجِهِ ۖ وَإِنَّ كَثِيرًا مِنَ الْخُلَطَاءِ لَيَبْغِي بَعْضُهُمْ عَلَىٰ بَعْضٍ إِلَّا الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ وَقَلِيلٌ مَا هُمْ ۗ وَظَنَّ دَاوُدُ أَنَّمَا فَتَنَّاهُ فَاسْتَغْفَرَ رَبَّهُ وَخَرَّ رَاكِعًا وَأَنَابَ ۩ ﴿٢٤﴾

२६. अतः त्यसप्रति हामीले उनलाई क्षमाप्रदान गर्‍यौं; हाम्रा जुनाफमा उनका निम्ति निकटस्थान र उत्तम विश्रामालय रहेको थियो ।

فَغَفَرْنَا لَهُ ذَٰلِكَ ۖ وَإِنَّ لَهُ عِنْدَنَا لَزُلْفَىٰ وَحُسْنَ مَآبٍ ﴿٢٥﴾

२७. "हे दाऊद, हामीले तिमीलाई पृथ्वीमा एकजना उत्तराधिकारीस्वरूप बनाएका छौं; अतः तिमी मानिसहरूका बीचमा न्यायका साथ निर्णय गर, तथा व्यर्थ अभिलाषाहरूको अनुसरण नगर, अन्यथा त्यसले तिमीलाई अल्लाहको मार्गबाट विचलित तुल्याउनेछ ।" जुन व्यक्तिहरू अल्लाहको मार्गबाट पथभ्रष्ट हुन्छन् तिनीहरूले हिसाब-किताबको दिनलाई विस्मरण गरेकै कारण तिनीहरूलाई कठोर दण्ड मिल्नेछ ।

يٰدَاوٗدُ اِنَّا جَعَلْنٰكَ خَلِيْفَةً فِى الْاَرْضِ فَاحْكُمْ بَيْنَ النَّاسِ بِالْحَقِّ وَلَا تَتَّبِعِ الْهَوٰى فَيُضِلَّكَ عَنْ سَبِيْلِ اللّٰهِ ؕ اِنَّ الَّذِيْنَ يَضِلُّوْنَ عَنْ سَبِيْلِ اللّٰهِ لَهُمْ عَذَابٌ شَدِيْدٌۢ بِمَا نَسُوْا يَوْمَ الْحِسَابِ ۝٢٧

२८. तथा आकाशमण्डल र पृथ्वी तथा तिनीहरूका बीचमा रहेका सम्पूर्ण वस्तुहरूलाई हामीले व्यर्थ सृष्टि गरेका छैनौं । यो ता अविश्वासी व्यक्तिहरूको दृष्टिकोण (सोचाइ) हो । अतः अग्निको कारण अविश्वासी व्यक्तिहरूमाथि धिक्कार छ ।

وَمَا خَلَقْنَا السَّمَآءَ وَالْاَرْضَ وَمَا بَيْنَهُمَا بَاطِلًا ؕ ذٰلِكَ ظَنُّ الَّذِيْنَ كَفَرُوْا ۚ فَوَيْلٌ لِّلَّذِيْنَ كَفَرُوْا مِنَ النَّارِ ۝٢٨

२९. के हामी विश्वासी र पुण्यकार्य गर्ने व्यक्तिहरूसित पृथ्वीमा भ्रष्टाचारपूर्ण कार्य गर्ने व्यक्तिहरूसरह व्यवहार गर्नेछौं र? के हामी धर्मनिष्ठ व्यक्तिहरूसित दुष्ट व्यक्तिहरूसरह व्यवहार गर्नेछौं र?

اَمْ نَجْعَلُ الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ كَالْمُفْسِدِيْنَ فِى الْاَرْضِ ۫ اَمْ نَجْعَلُ الْمُتَّقِيْنَ كَالْفُجَّارِ ۝٢٩

३०. यो कृपाले परिपूर्ण पुस्तक हामीले तिमीप्रति अवतीर्ण गरेका छौं, ताकि तिनीहरूले यसका आयात (वाणी)हरूबारे चिन्तन मनन गरून् तथा बुद्धिमान व्यक्तिहरूले अर्ती प्राप्त गरून् ।

كِتٰبٌ اَنْزَلْنٰهُ اِلَيْكَ مُبٰرَكٌ لِّيَدَّبَّرُوْٓا اٰيٰتِهٖ وَلِيَتَذَكَّرَ اُولُوا الْاَلْبَابِ ۝٣٠

३१. तथा हामीले दाऊदलाई सुलेमान प्रदान गर्‍यौं उनी एकजना उत्कृष्ट सेवक थिए । उनी सदा (हामीतर्फ) झुकिरहन्थे ।

وَوَهَبْنَا لِدَاوٗدَ سُلَيْمٰنَ ؕ نِعْمَ الْعَبْدُ ؕ اِنَّهٗٓ اَوَّابٌ ۝٣١

३२. जब उनका सामुन्ने सन्ध्यापख उन्नत नसलका द्रुतगामी घोडाहरू पेश

اِذْ عُرِضَ عَلَيْهِ بِالْعَشِىِّ الصّٰفِنٰتُ الْجِيَادُ ۝٣٢

गरिए,

३३. उनले भने, "उत्तम वस्तुहरूलाई म किन मनपराउँछु भने मलाई तिनीहरूले मेरा प्रतिपालकको स्मरण गराउँछन् ।" (अत: उनी) तिनीहरू पर्दापछि ओभ्फल नहुन्जेल सम्म - बसिरहे) ।

فَقَالَ إِنِّيٓ أَحۡبَبۡتُ حُبَّ ٱلۡخَيۡرِ عَن ذِكۡرِ رَبِّي حَتَّىٰ تَوَارَتۡ بِٱلۡحِجَابِ ﴿٣٢﴾

३४. (उनले भने), "तिनीहरूलाई मसमक्ष फर्काएर ल्याऊ ।" तब उनले (तिनीहरूका) फिला र गर्धन थपथपाउन लागे ।

رُدُّوهَا عَلَيَّ فَطَفِقَ مَسۡحًا بِٱلسُّوقِ وَٱلۡأَعۡنَاقِ ﴿٣٣﴾

३५. तथा हामीले सुलेमानको परीक्षा लियौं र उनको सिंहासनमाथि एउटा (मृत) शरीर राख्यौं । तब उनी (आफ्ना प्रतिपालकतर्फ उनको करुणा याचना गर्दै) भुके ।

وَلَقَدۡ فَتَنَّا سُلَيۡمَٰنَ وَأَلۡقَيۡنَا عَلَىٰ كُرۡسِيِّهِۦ جَسَدًا ثُمَّ أَنَابَ ﴿٣٤﴾

३६. उनले भने, "हे मेरा प्रतिपालक, मलाई क्षमा गर तथा मलाई यस्तो राज्य प्रदान गर जसलाई प्राप्त गर्ने योग्यता मेरो जीवनपश्चात् अन्य कसैमा नहोस्; तिमी निश्चय नै परम दाता रहेका छौ ।"

قَالَ رَبِّ ٱغۡفِرۡ لِي وَهَبۡ لِي مُلۡكًا لَّا يَنۢبَغِي لِأَحَدٍ مِّنۢ بَعۡدِيٓ إِنَّكَ أَنتَ ٱلۡوَهَّابُ ﴿٣٥﴾

३७. अत: हामीले हावालाई उनको अधीनस्थ गऱ्यौं, त्यो उनको आदेशान्तर्गत जता जता उनले इच्छा गर्थे उतै नम्रतापूर्वक चल्ने गर्थ्यो,

فَسَخَّرۡنَا لَهُ ٱلرِّيحَ تَجۡرِي بِأَمۡرِهِۦ رُخَآءً حَيۡثُ أَصَابَ ﴿٣٦﴾

३८. तथा दानवहरूलाई, जो (सबै प्रकारका) निर्माणकर्ता र पौडीबाजहरू थिए,

وَٱلشَّيَٰطِينَ كُلَّ بَنَّآءٍ وَغَوَّاصٍ ﴿٣٧﴾

३९. तथा अन्य केही जञ्जीरले बाँधिएका व्यक्तिहरूलाई समेत (उनको सेवामा लगाएका थियौं) ।

وَءَاخَرِينَ مُقَرَّنِينَ فِي ٱلۡأَصۡفَادِ ﴿٣٨﴾

४०. "यो हाम्रोतर्फबाट उपहारस्वरूप हो– त्यसकारण चाहे तिमी देउ अथवा रोकेर

هَٰذَا عَطَآؤُنَا فَٱمۡنُنۡ أَوۡ أَمۡسِكۡ بِغَيۡرِ حِسَابٍ ﴿٣٩﴾

राख– बिना हिसाब- किताब ।"

वَإِنَّ لَهُۥ عِندَنَا لَزُلْفَىٰ وَحُسْنَ مَـَٔابٍ ﴿٤٠﴾

४१. तथा निश्चयपूर्वक उनलाई हाम्रा निकटमा दर्जा तथा उत्तम विश्रामस्थाल प्राप्त थियो ।

وَٱذْكُرْ عَبْدَنَآ أَيُّوبَ إِذْ نَادَىٰ رَبَّهُۥٓ أَنِّى مَسَّنِىَ ٱلشَّيْطَـٰنُ بِنُصْبٍ وَعَذَابٍ ﴿٤١﴾

४२. तथा हाम्रा सेवक अय्यूब (ज़ोब) लाई याद गर, जब उनले आफ्ना प्रतिपालकलाई (के भन्दै) पुकारे भने, "सैतानले निश्चय नै मलाई ठूलो दुख र पीडा दिएको छ ।"

ٱرْكُضْ بِرِجْلِكَ ۖ هَـٰذَا مُغْتَسَلٌۢ بَارِدٌ وَشَرَابٌ ﴿٤٢﴾

४३. "तिमी (आफ्नो सवारीको घोडालाई आफ्नो खुट्टाले हिर्काउँदै (चाँडो) हाँक । त्यहाँ नुहाउने र पिउने चिसो पानी (पर्याप्त) छ ।"

وَوَهَبْنَا لَهُۥٓ أَهْلَهُۥ وَمِثْلَهُم مَّعَهُمْ رَحْمَةً مِّنَّا وَذِكْرَىٰ لِأُو۟لِى ٱلْأَلْبَـٰبِ ﴿٤٣﴾

४४. तथा हामीले उनलाई उनको परिवार र तिनीहरूका साथै तिनीहरूसरह अन्य धेरै (व्यक्तिहरू) आफ्नो कृपा (द्वारा) प्रदान गऱ्यौं, तथा (यो) बुद्धिमान व्यक्तिहरूका निम्ति उपदेशस्वरूप (रहेको छ) ।

وَخُذْ بِيَدِكَ ضِغْثًا فَٱضْرِب بِّهِۦ وَلَا تَحْنَثْ ۗ إِنَّا وَجَدْنَـٰهُ صَابِرًا ۚ نِّعْمَ ٱلْعَبْدُ ۖ إِنَّهُۥٓ أَوَّابٌ ﴿٤٤﴾

४५. तथा (हामीले उनलाई भन्यौं), "आफ्नो हातमा सुकेका हाँगा लेउ र त्यसद्वारा (सवारी) हाँक तथा आफ्नो प्रतिज्ञा नतोड ।" हामीले उनलाई निस्सन्देह धैर्यशील पायौं । तथा उनी उत्कृष्ट सेवक थिए । निश्चय नै उनी सदा (अल्लाहतर्फ) झुकिरहने गर्थे ।

وَٱذْكُرْ عِبَـٰدَنَآ إِبْرَٰهِيمَ وَإِسْحَـٰقَ وَيَعْقُوبَ أُو۟لِى ٱلْأَيْدِى وَٱلْأَبْصَـٰرِ ﴿٤٥﴾

४६. तथा हाम्रा सेवक इब्राहिमलाई र इस्हाकलाई र याकूबलाई स्मरण गर, जो सामर्थ्यशील तथा दूरदर्शी (व्यक्तिहरू) थिए

إِنَّآ أَخْلَصْنَـٰهُم بِخَالِصَةٍ ذِكْرَى ٱلدَّارِ ﴿٤٦﴾

४७. हामीले तिनीहरूलाई विशेषगरी (मानिसहरूलाई) परलोकको घर स्मरण गराउनका निम्ति निर्वाचित गरेका थियौं ।

وَإِنَّهُمْ عِندَنَا لَمِنَ الْمُصْطَفَيْنَ الْأَخْيَارِ ﴿٤٨﴾

४८. तथा साँचै नै तिनीहरू हाम्रा दृष्टिमा निर्वाचित (तथा) उत्कृष्ट सेवकहरू रहेका छन् ।

وَاذْكُرْ إِسْمَاعِيلَ وَالْيَسَعَ وَذَا الْكِفْلِ ۖ وَكُلٌّ مِّنَ الْأَخْيَارِ ﴿٤٩﴾

४९. तथा इस्माईल र एलिशा (यसआ) तथा जुल-किफल्* लाई स्मरण गर, तथा तिनीहरू सबै उत्कृष्ट व्यक्तिहरू थिए ।

هَٰذَا ذِكْرٌ ۚ وَإِنَّ لِلْمُتَّقِينَ لَحُسْنَ مَآبٍ ﴿٥٠﴾

५०. यो एउटा स्मारिका हो । तथा धर्मनिष्ठ व्यक्तिहरूका निम्ति निश्चय नै एउटा उत्कृष्ट आश्रय स्थान रहेको छ :

جَنَّاتِ عَدْنٍ مُّفَتَّحَةً لَّهُمُ الْأَبْوَابُ ﴿٥١﴾

५१. (अर्थात्) चिरकालीन बगैंचाहरू, जसका ढोकाहरू तिनीहरूका निम्ति सदा खुल्ला रहनेछन् ।

مُتَّكِئِينَ فِيهَا يَدْعُونَ فِيهَا بِفَاكِهَةٍ كَثِيرَةٍ وَشَرَابٍ ﴿٥٢﴾

५२. त्यहाँ तिनीहरू (उच्च सिह्वानीहरूमा) टेक लगाएर बस्ने छन् । तिनीहरूले त्यहाँ आराम र (हर्षोल्लासकासाथ) पर्याप्त फल र पानी मगाउने छन् ।

وَعِندَهُمْ قَاصِرَاتُ الطَّرْفِ أَتْرَابٌ ﴿٥٣﴾

५३. तथा तिनीहरूसित नियन्त्रित दृष्टियुक्त, दौंतरी (पवित्र महिलाहरू) हुनेछन् ।

هَٰذَا مَا تُوعَدُونَ لِيَوْمِ الْحِسَابِ ﴿٥٤﴾

५४. यी तिनै कुराहरू हुन्, जसको हिसाब-किताबका दिन तिमीहरूलाई प्राप्त हुने वचन दिइन्छ ।

إِنَّ هَٰذَا لَرِزْقُنَا مَا لَهُ مِن نَّفَادٍ ﴿٥٥﴾

५५. वस्तुत: यो हाम्रो यस्तो जीवनवृत्ति हो जुन कहिल्यै सकिनेछैन ।

هَٰذَا ۚ وَإِنَّ لِلطَّاغِينَ لَشَرَّ مَآبٍ ﴿٥٦﴾

५६. यो (विश्वासीजनका निम्ति) रहेको छ । परन्तु विद्रोही व्यक्तिहरूका निम्ति भने अति निकृष्ट प्रत्यावर्तनको स्थान रहेको छ-

جَهَنَّمَ ۚ يَصْلَوْنَهَا ۚ فَبِئْسَ الْمِهَادُ ﴿٥٧﴾

५७. (अर्थात्) नर्क, जहाँ तिनीहरू जल्नेछन् । त्यो कति नै निकृष्ट विश्रामस्थल रहेको छ !

هَٰذَا ۙ فَلْيَذُوقُوهُ حَمِيمٌ وَغَسَّاقٌ ﴿٥٨﴾

५८. त्यो (तिनीहरूलाई प्राप्त हुने वस्तु) हो । अतः तिनीहरूले त्यसलाई चाखून, (अर्थात्) एउटा उम्लँदो तरल पदार्थ, तथा अति चिसो दुर्गन्धित पानी ।

وَآخَرُ مِن شَكْلِهِ أَزْوَاجٌ ﴿٥٩﴾

५९. तथा त्यसै प्रकारका अन्य (धेरै यातनाहरू) ।

هَٰذَا فَوْجٌ مُّقْتَحِمٌ مَّعَكُمْ ۖ لَا مَرْحَبًا بِهِمْ ۚ إِنَّهُمْ صَالُو النَّارِ ﴿٦٠﴾

६०. यो पनि तिमीहरूभैं) तिमीहरूसितै दाखिल हुने एउटा समूह हो, (ए दुष्कर्मीहरूका मुखियाहरू हो ।" तिनीहरूको कुनै स्वागत हुनेछैन । तिनीहरू अवश्य अग्निमा जल्नेछन् ।

قَالُوا بَلْ أَنتُمْ لَا مَرْحَبًا بِكُمْ ۖ أَنتُمْ قَدَّمْتُمُوهُ لَنَا ۖ فَبِئْسَ الْقَرَارُ ﴿٦١﴾

६१. तिनीहरूले भन्नेछन्, "होइन, (अपितु) तिमीहरू यस्ता व्यक्तिहरू हौ जसको वास्तवमा कुनै स्वागत हुनेछैन । तिमीहरूले नै त्यो (नर्क) हाम्रा निम्ति तयार पारेका हौ । अतः त्यो कति नै निकृष्ट विश्रामस्थान रहेको छ !

قَالُوا رَبَّنَا مَن قَدَّمَ لَنَا هَٰذَا فَزِدْهُ عَذَابًا ضِعْفًا فِي النَّارِ ﴿٦٢﴾

६२. तिनीहरूले के (पनि) भन्नेछन् भने, "हे हाम्रा प्रतिपालक, जसले हाम्रा निम्ति त्यो तयार पार्‍यो– त्यसका निम्ति अग्निमा दोब्बर दण्ड थप ।"

وَقَالُوا مَا لَنَا لَا نَرَىٰ رِجَالًا كُنَّا نَعُدُّهُم مِّنَ الْأَشْرَارِ ﴿٦٣﴾

६३. तथा तिनीहरूले भन्नेछन्, हामीलाई के भएको छ र (आज) हामी ती व्यक्तिहरूलाई देख्दैनौं जसलाई हामी दुष्ट ठान्ने गर्थ्यौं?

أَتَّخَذْنَاهُمْ سِخْرِيًّا أَمْ زَاغَتْ عَنْهُمُ الْأَبْصَارُ ﴿٦٤﴾

६४. के हामी तिनीहरूसित (अन्यायपूर्वक) उपहास गर्ने गर्थ्यौं, अथवा हाम्रा दृष्टिबाट तिनीहरू अदृश्य रहेका छन्?"

६५. अग्नि निवासी ती व्यक्तिहरूको पारस्परिक विवाद- निश्चयपूर्वक, एउटा सत्य - घटना) हो ।

إِنَّ ذَٰلِكَ لَحَقٌّ تَخَاصُمُ أَهْلِ النَّارِ ﴿٦٥﴾

६६. तिमी भन, "म ता केवल एउटा सावधानकर्ता हुँ, तथा अल्लाहबाहेक अन्य कोही उपास्य छैन, उनी अद्वितीय, प्रबल रहेका छन्,

قُلْ إِنَّمَا أَنَا مُنذِرٌ ۖ وَمَا مِنْ إِلَٰهٍ إِلَّا اللَّهُ الْوَاحِدُ الْقَهَّارُ ﴿٦٦﴾

६७. "आकाशमण्डल र पृथ्वी तथा तिनीहरू दुबैको बीचमा रहेका सम्पूर्ण वस्तुहरूका स्वामी, उनी परम शक्तिशील, महान क्षमाशील छन् ।"

رَبُّ السَّمَاوَاتِ وَالْأَرْضِ وَمَا بَيْنَهُمَا الْعَزِيزُ الْغَفَّارُ ﴿٦٧﴾

६८. तिमी भन, "यो एउटा ठूलो सन्देश रहेको छ,

قُلْ هُوَ نَبَأٌ عَظِيمٌ ﴿٦٨﴾

६९. "जसबाट तिमीहरू विमुख भइरहेछौ

أَنتُمْ عَنْهُ مُعْرِضُونَ ﴿٦٩﴾

७०. "त्यो महान सभा जसमा तिनीहरू (देवदूतहरू) (यसबारे) परस्पर तर्क गरिरहेका थिए, मलाई (त्यसबारे) केही ज्ञान थिएन,

مَا كَانَ لِيَ مِنْ عِلْمٍ بِالْمَلَإِ الْأَعْلَىٰ إِذْ يَخْتَصِمُونَ ﴿٧٠﴾

७१. "परन्तु म स्पष्टरूपमा वर्णन गर्ने सावधानकर्ता हुँ भनी मप्रति आकाशवाणी गरिएको छ ।"

إِن يُوحَىٰ إِلَيَّ إِلَّا أَنَّمَا أَنَا نَذِيرٌ مُّبِينٌ ﴿٧١﴾

७२. जब तिम्रा प्रतिपालकले देवदूतहरूलाई भनेका थिए, "म गिलो माटोबाट मानिसको सिर्जना गर्न लागिरहेछु,

إِذْ قَالَ رَبُّكَ لِلْمَلَائِكَةِ إِنِّي خَالِقٌ بَشَرًا مِّن طِينٍ ﴿٧٢﴾

७३. तथा जब म त्यसलाई (पूर्णरूपमा) आकृति प्रदान गर्नेछु, तथा मेरो आत्माबाट त्यसभित्र श्वास प्रश्वास प्रवेश गराउने छु । (तब) तिमीहरू उनको आज्ञापालन गर्दै उनका सामुन्ने झूक ।"

فَإِذَا سَوَّيْتُهُ وَنَفَخْتُ فِيهِ مِن رُّوحِي فَقَعُوا لَهُ سَاجِدِينَ ﴿٧٣﴾

७४. अत: फरिस्ताहरूले सबै मिली आज्ञापालन गरे ।

فَسَجَدَ الْمَلٰٓئِكَةُ كُلُّهُمْ اَجْمَعُوْنَ ۝٧٣

७५. परन्तु इब्लिसले (गरेन) । उसले अहङ्कार गऱ्यो, तथा उ अविश्वासीहरूमध्ये - एक) भयो ।

اِلَّآ اِبْلِيْسَ ؕ اِسْتَكْبَرَ وَ كَانَ مِنَ الْكٰفِرِيْنَ ۝٧٤

७६. (अल्लाहले) भने, "ए इब्लिस्, जसलाई मैले आफ्ना दुई हातले बनाएको थिएँ त्यसको आज्ञाकारी बन्नबाट तिमीलाई कसले रोक्यो? के तिमीले अहङ्कार कै कारण त्यसो गरेका हौ, अथवा तिमी साँचै नै महान रहेका छौ ?"

قَالَ يٰٓاِبْلِيْسُ مَا مَنَعَكَ اَنْ تَسْجُدَ لِمَا خَلَقْتُ بِيَدَيَّ ؕ اَسْتَكْبَرْتَ اَمْ كُنْتَ مِنَ الْعَالِيْنَ ۝٧٥

७७. उसले भन्यो, "म उभन्दा श्रेष्ठ छु । तिमीले मलाई अग्निबाट सृष्टि गरेका हौ तथा उसलाई चाहिँ तिमीले गिलो माटोबाट सृष्टि गरेका हौ ।"

قَالَ اَنَا خَيْرٌ مِّنْهُ ؕ خَلَقْتَنِيْ مِنْ نَّارٍ وَّ خَلَقْتَهٗ مِنْ طِيْنٍ ۝٧٦

७८. (अल्लाहले) भने, "त्यसोभए तिमी निस्केर गइहाल, किनभने तिमी तिरस्कृत हुन पुगेका छौ ।

قَالَ فَاخْرُجْ مِنْهَا فَاِنَّكَ رَجِيْمٌ ۝٧٧

७९. तथा निश्चय नै निर्णयका दिनसम्मका निम्ति तिमीमाथि मेरो अभिशाप परिरहने छ ।"

وَّ اِنَّ عَلَيْكَ لَعْنَتِيْٓ اِلٰى يَوْمِ الدِّيْنِ ۝٧٨

८०. उसले भन्यो, "हे मेरा प्रतिपालक, तिनीहरूको पुनरुत्थान हुने समयसम्मका निम्ति मलाई अवसर प्रदान गर ।"

قَالَ رَبِّ فَاَنْظِرْنِيْٓ اِلٰى يَوْمِ يُبْعَثُوْنَ ۝٧٩

८१. अल्लाहले भने, "निश्चयपूर्वक तिमी अवसर प्राप्त व्यक्तिहरूमा (सामेल) भएका छौ,

قَالَ فَاِنَّكَ مِنَ الْمُنْظَرِيْنَ ۝٨٠

८२. निर्धारित समयका निम्ति तोकिएको दिनसम्म तिमीलाई (अवसर मिल्नेछ) ।"

اِلٰى يَوْمِ الْوَقْتِ الْمَعْلُوْمِ ۝٨١

قَالَ فَبِعِزَّتِكَ لَاُغْوِيَنَّهُمْ اَجْمَعِيْنَ ﴿٨٢﴾

८३. उसले भन्यो, "त्यसो भए तिम्रो महानताको शपथ, म अवश्य तिनीहरू सबैलाई पथभ्रष्ट गरेर छाड्नेछु,

اِلَّا عِبَادَكَ مِنْهُمُ الْمُخْلَصِيْنَ ﴿٨٣﴾

८४. केवल तिनीहरूमध्ये तिम्रा निर्वाचित सेवकहरूबाहेक ।"

قَالَ فَالْحَقُّ وَالْحَقَّ اَقُوْلُ ﴿٨٤﴾

८५. (अल्लाहले) भने, "अतः सत्य यही नै हो, तथा म सत्य कुरा नै गर्ने गर्छु,

لَاَمْلَئَنَّ جَهَنَّمَ مِنْكَ وَمِمَّنْ تَبِعَكَ مِنْهُمْ اَجْمَعِيْنَ ﴿٨٥﴾

८६. (अर्थात्) म अवश्य तिमी र तिम्रो अनुसरण गर्ने व्यक्तिहरू सबैलाई मिलाएर नर्कलाई भर्नेछु ।"

قُلْ مَآ اَسْئَلُكُمْ عَلَيْهِ مِنْ اَجْرٍ وَّمَآ اَنَا مِنَ الْمُتَكَلِّفِيْنَ ﴿٨٦﴾

८७. तिमी भन, "म यस कार्यको सट्टा तिमीहरूसित कुनै पारितोषिक माग्दिन, न त म आडम्बरी व्यक्तिहरूमध्येको (एक) हुँ

اِنْ هُوَ اِلَّا ذِكْرٌ لِّلْعٰلَمِيْنَ ﴿٨٧﴾

८८. "यो ता (सम्पूर्ण) मानवजातिका निम्ति एउटा उपदेश (पूर्ण पुस्तक) हो ।

وَلَتَعْلَمُنَّ نَبَاَهٗ بَعْدَ حِيْنٍ ﴿٨٨﴾

८९. तथा केही समयपश्चात् तिमीहरूले अवश्य यसको भावार्थलाई जान्नेछौ ।"

سُوْرَةُ الزُّمَرِ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ سِتٌّ وَّسَبْعُوْنَ اٰيَةً وَّثَمَانِيَةُ رُكُوْعَاتٍ

## अल्-जुमर
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

تَنْزِيْلُ الْكِتٰبِ مِنَ اللّٰهِ الْعَزِيْزِ الْحَكِيْمِ ②

२. सर्वशक्तिमान, परम तत्वज्ञ, अल्लाहको तर्फबाट यस पुस्तकको अवतरण भएको हो

اِنَّآ اَنْزَلْنَآ اِلَيْكَ الْكِتٰبَ بِالْحَقِّ فَاعْبُدِ اللّٰهَ مُخْلِصًا لَّهُ الدِّيْنَ ③

३. हामीले नै यो सत्यले परिपूर्ण पुस्तक तिमीप्रति अवतीर्ण गरेका हौं, त्यसकारण तिमी उनकै एकनिष्ठ आस्थावान बनी, निष्कपटताका साथ अल्लाहको उपासना गर ।

اَلَا لِلّٰهِ الدِّيْنُ الْخَالِصُ ۚ وَالَّذِيْنَ اتَّخَذُوْا مِنْ دُوْنِهٖٓ اَوْلِيَآءَ ۘ مَا نَعْبُدُهُمْ اِلَّا لِيُقَرِّبُوْنَآ اِلَى اللّٰهِ زُلْفٰى ۚ اِنَّ اللّٰهَ يَحْكُمُ بَيْنَهُمْ فِيْ مَا هُمْ فِيْهِ يَخْتَلِفُوْنَ ۚ اِنَّ اللّٰهَ لَا يَهْدِيْ مَنْ هُوَ كٰذِبٌ كَفَّارٌ ④

४. सुन, निष्कपट आज्ञाकारिता (केवल) अल्लाहकै निम्ति रहेको छ । तथा जसले उनलाई छाडी अन्य (वस्तुहरू)लाई संरक्षक तुल्याउँछन्, (तिनीहरू भन्छन्), "तिनीहरूले हामीलाई अल्लाहका निकट पुर्‍याइ दिनेछन् भनी हामी तिनीहरूको उपासना गर्छौं ।" जुन कुरामा तिनीहरू मतभेद राख्छन् त्यसबारे अल्लाहले निश्चयपूर्वक तिनीहरूका बीचमा निर्णय गर्नेछन् । अल्लाहले निश्चय नै कृतघ्न मिथ्यावादी व्यक्तिलाई मार्ग देखाउँदैनन् ।

لَوْ اَرَادَ اللّٰهُ اَنْ يَّتَّخِذَ وَلَدًا لَّاصْطَفٰى مِمَّا يَخْلُقُ مَا يَشَآءُ ۙ سُبْحٰنَهٗ ۚ هُوَ اللّٰهُ الْوَاحِدُ الْقَهَّارُ ⑤

५. यदि अल्लाहले स्वयम्का निम्ति पुत्र धारण गर्न चाहेका भए, आफ्ना सृष्टिबाट जसलाई इच्छा गर्थे त्यसलाई चुन्न सक्ने थिए । उनी परम पवित्र छन् । उनी अद्वितीय, प्रबल अल्लाह हुन् ।

خَلَقَ السَّمٰوٰتِ وَالْاَرْضَ بِالْحَقِّ ۚ يُكَوِّرُ

६. उनले आकाशमण्डल र पृथ्वीलाई सत्यज्ञानका आवश्यकताहरू अनुरूप सृष्टि

الَّيْلَ عَلَى النَّهَارِ وَ يُكَوِّرُ النَّهَارَ عَلَى الَّيْلِ وَ سَخَّرَ الشَّمْسَ وَ الْقَمَرَ ؕ كُلٌّ يَّجْرِيْ لِاَجَلٍ مُّسَمًّى ؕ اَلَا هُوَ الْعَزِيْزُ الْغَفَّارُ ۝

गरेका छन् । उनी रात्रिले दिनलाई ढाक्छन्, तथा दिनले रात्रिलाई ढाक्ने गर्छन्, तथा सूर्य र चन्द्रलाई उनले सेवामा खटाएका छन्, हरेकले एउटा निर्धारित समयसम्म (आफ्नो) कार्य निरन्तर गरिरहेका छन् । सुन, (केवल) उनी नै (एकमात्र) सर्वशक्तिमान, परम क्षमाशील छन् ।

خَلَقَكُمْ مِّنْ نَّفْسٍ وَّاحِدَةٍ ثُمَّ جَعَلَ مِنْهَا زَوْجَهَا وَ اَنْزَلَ لَكُمْ مِّنَ الْاَنْعَامِ ثَمٰنِيَةَ اَزْوَاجٍ ؕ يَخْلُقُكُمْ فِيْ بُطُوْنِ اُمَّهٰتِكُمْ خَلْقًا مِّنْۢ بَعْدِ خَلْقٍ فِيْ ظُلُمٰتٍ ثَلٰثٍ ؕ ذٰلِكُمُ اللّٰهُ رَبُّكُمْ لَهُ الْمُلْكُ ؕ لَاۤ اِلٰهَ اِلَّا هُوَ ۚ فَاَنّٰى تُصْرَفُوْنَ ۝

७. उनले तिमीहरूलाई एउटै ज्यानबाट सृष्टि गरे, त्यसपछि उनले त्यसैबाट त्यसको जोडी सिर्जना गरे, तथा उनले तिमीहरूका निम्ति आठ जोडी चौपायाहरू बनाएका छन् । तिमीहरूलाई उनले तिमीहरूकी आमाको गर्भमा सृष्टि गर्छन्, सृष्टिपछि सृष्टि गर्दै तीन अन्धकारम यस्तरहरूको व्यतिक्रमणपश्चात् । उनी नै तिमीहरूका प्रतिपालक, अल्लाह हुन् । साम्राज्यका स्वामी उनी नै हुन् । उनीबाहेक अन्य कोही उपास्य छैन । त्यसोभए तिमीहरूलाई विमुख गरी कता लगिँदैछ त?

اِنْ تَكْفُرُوْا فَاِنَّ اللّٰهَ غَنِيٌّ عَنْكُمْ ۫ وَلَا يَرْضٰى لِعِبَادِهِ الْكُفْرَ ۚ وَ اِنْ تَشْكُرُوْا يَرْضَهُ لَكُمْ ؕ وَ لَا تَزِرُ وَازِرَةٌ وِّزْرَ اُخْرٰى ؕ ثُمَّ اِلٰى رَبِّكُمْ مَّرْجِعُكُمْ فَيُنَبِّئُكُمْ بِمَا كُنْتُمْ تَعْمَلُوْنَ ؕ اِنَّهٗ عَلِيْمٌۢ بِذَاتِ الصُّدُوْرِ ۝

८. यदि तिमीहरू कृतघ्न भएमा, अल्लाह तिमीहरूबाट (पूर्ण स्वाधीन) निश्चय नै पूर्ण आत्मनिर्भर छन् । तथा उनी आफ्ना सेवकहरूमा कृतघ्नतालाई रुचाउँदैनन् । परन्तु यदि तिमीहरूले कृतज्ञता प्रकट गरेमा, उनले तिमीहरूमा त्यसलाई मनपराउँछन् । तथा कुनै बोझ उठाउने (व्यक्ति)ले अन्य कसैको बोझ उठाउन सक्नेछैन । अत: तिमीहरूले आफ्नै प्रतिपालकतर्फ फर्केर जानु छ, तथा उनले तिमीहरूलाई तिमीहरूले गर्ने गरेका कार्यहरूबारे अवगत गराउने छन् । उनी निश्चयपूर्वक छातीभित्र गुप्त रहेका सम्पूर्ण कुराहरूलाई राम्ररी जान्दछन् ।

وَ اِذَا مَسَّ الْاِنْسَانَ ضُرٌّ دَعَا رَبَّهٗ مُنِيْبًا

९. तथा जब मानिसमाथि कुनै सङ्कट आइलाग्छ, उसले आफ्ना प्रतिपालकलाई

إِلَيْهِ ثُمَّ إِذَا خَوَّلَهُۥ نِعْمَةً مِّنْهُ نَسِيَ مَا كَانَ يَدْعُوٓا۟ إِلَيْهِ مِن قَبْلُ وَجَعَلَ لِلَّهِ أَندَادًا لِّيُضِلَّ عَن سَبِيلِهِۦ ۚ قُلْ تَمَتَّعْ بِكُفْرِكَ قَلِيلًا ۖ إِنَّكَ مِنْ أَصْحَٰبِ ٱلنَّارِ ٩

(पश्चातापका साथ) उनीतर्फ झुक्दै पुकार्ने गर्छ । त्यसपछि जब उसमाथि उनले आफ्नो अनुग्रह वर्षण गर्छन् तब जुन कार्यका निम्ति त्यसले पहिला प्रार्थना गर्ने गर्थ्यो त्यसलाई भुल्न पुग्छ, र अल्लाहका भागीदार तुल्याउन लाग्छ ताकि उसले (मानिसहरूलाई) उनको मार्गबाट विपथगामी तुल्याओस् । तिमी भन, "केही क्षणका निम्ति आफ्नो अविश्वासद्वारा लाभ उठा, (अन्तमा) तँ अवश्य अग्निमा बास गर्न पुग्नेछस् ।"

أَمَّنْ هُوَ قَٰنِتٌ ءَانَآءَ ٱلَّيْلِ سَاجِدًا وَقَآئِمًا يَحْذَرُ ٱلْءَاخِرَةَ وَيَرْجُوا۟ رَحْمَةَ رَبِّهِۦ ۗ قُلْ هَلْ يَسْتَوِى ٱلَّذِينَ يَعْلَمُونَ وَٱلَّذِينَ لَا يَعْلَمُونَ ۗ إِنَّمَا يَتَذَكَّرُ أُو۟لُوا۟ ٱلْأَلْبَٰبِ ١٠

१०. के त्यो व्यक्ति जसले रात्रि समयमा पूर्ण आज्ञाकारिताका साथ साष्टाङ्ग दण्डवत गर्दै तथा उभिएर पनि (प्रतिपालकको) प्रार्थना गर्ने गर्छ, (तथा) परलोकप्रति डराउँछ र आफ्ना प्रतिपालकको करुणाप्रति आशा राख्छ, (त्यो व्यक्तिसरह) हुन सक्छ र जसले त्यसो गर्दैन? तिमी भन, "के ज्ञानी व्यक्तिहरू र अज्ञानी व्यक्तिहरू एक समान हुन सक्छन् र? " वस्तुतः बुद्धिमान व्यक्तिहरूले मात्र उपदेश ग्रहण गर्ने गर्छन् ।

قُلْ يَٰعِبَادِ ٱلَّذِينَ ءَامَنُوا۟ ٱتَّقُوا۟ رَبَّكُمْ ۚ لِلَّذِينَ أَحْسَنُوا۟ فِى هَٰذِهِ ٱلدُّنْيَا حَسَنَةٌ ۗ وَأَرْضُ ٱللَّهِ وَٰسِعَةٌ ۗ إِنَّمَا يُوَفَّى ٱلصَّٰبِرُونَ أَجْرَهُم بِغَيْرِ حِسَابٍ ١١

११. तिमी भन, "हे मेरा विश्वासी सेवकहरू हो, आफ्ना प्रतिपालकसित डराऊ । यस जीवनमा जसले पुण्यकार्य गर्छन् तिनीहरूका निम्ति (उत्तम प्रतिदान) रहेको छ । तथा अल्लाहको धर्ती अति विस्तृत छ । वस्तुतः धैर्यधारी व्यक्तिहरूलाई तिनीहरूको प्रतिदान विनाहिसाब प्रदान गरिनेछ ।"

قُلْ إِنِّىٓ أُمِرْتُ أَنْ أَعْبُدَ ٱللَّهَ مُخْلِصًا لَّهُ ٱلدِّينَ ١٢

१२. तिमी भन, "वस्तुतः मलाई उनकै एकनिष्ठ आस्थावान बनी अल्लाहको उपासना गर्ने आदेश दिइएको छ ।

وَأُمِرْتُ لِأَنْ أَكُونَ أَوَّلَ ٱلْمُسْلِمِينَ ١٣

१३. "तथा मलाई (उनको) प्रथम (सर्वश्रेष्ठ) आज्ञाकारी बन्ने आदेश दिइएको छ ।"

قُلْ إِنِّيٓ أَخَافُ إِنْ عَصَيْتُ رَبِّي عَذَابَ يَوْمٍ عَظِيمٍ ⑬

१४. तिमी भन, "यदि मैले आफ्ना प्रतिपालकको अवज्ञा गरेमा म निश्चयपूर्वक एउटा भयानक दिनको दण्डबाट डराउँछु ।"

قُلِ اللَّهَ أَعْبُدُ مُخْلِصًا لَّهُۥ دِينِي ⑭

१५. तिमी भन, "म अल्लाहको एकनिष्ठ आस्थावान बनी (उनको) उपासना गर्ने गर्छु

فَاعْبُدُوا مَا شِئْتُم مِّن دُونِهِۦ ۗ قُلْ إِنَّ الْخَاسِرِينَ الَّذِينَ خَسِرُوٓا أَنفُسَهُمْ وَأَهْلِيهِمْ يَوْمَ الْقِيَامَةِ ۗ أَلَا ذَٰلِكَ هُوَ الْخُسْرَانُ الْمُبِينُ ⑮

१६. "अत: तिमीहरू उनलाई छाडी जसको चाहन्छौ त्यसैको उपासना गर ।" तिमी भन, "पुनरुत्थानका दिन जसले आफ्नो आत्मालाई र आफ्ना परिवारलाई पतित तुल्याउनेछन् तिनीहरू नै अवश्य घाटाग्रस्त हुनेछन् ।" सावधान ! त्यही नै वास्तवमा खुल्लम-खुल्ला घाटा (साबित) हुनेछ ।

لَهُم مِّن فَوْقِهِمْ ظُلَلٌ مِّنَ النَّارِ وَمِن تَحْتِهِمْ ظُلَلٌ ۚ ذَٰلِكَ يُخَوِّفُ اللَّهُ بِهِۦ عِبَادَهُۥ ۚ يَا عِبَادِ فَاتَّقُونِ ⑯

१७. तिनीहरूमाथि अग्निका छाँयाहरू हुनेछन् भने तिनीहरूमनि पनि (त्यस्तै) छाँयाहरू हुनेछन्, यी तिनै वस्तुहरू हुन जसबाट अल्लाह आफ्ना सेवकहरूलाई सावधान गर्छन् । अत: "हे मेरा सेवकहरू हो, केवल मसित डराऊ ।"

وَالَّذِينَ اجْتَنَبُوا الطَّاغُوتَ أَن يَعْبُدُوهَا وَأَنَابُوٓا إِلَى اللَّهِ لَهُمُ الْبُشْرَىٰ ۚ فَبَشِّرْ عِبَادِ ⑰

१८. तथा जुन व्यक्तिहरू मिथ्या उपास्यहरूको उपासना गर्नबाट बच्ने गर्छन् र अल्लाहतर्फ झुक्छन्– तिनीहरूका निम्ति शुभसन्देश रहेको छ । अत: मेरा सेवकहरूलाई शुभसन्देश देउ,

الَّذِينَ يَسْتَمِعُونَ الْقَوْلَ فَيَتَّبِعُونَ أَحْسَنَهُۥٓ ۚ أُولَٰٓئِكَ الَّذِينَ هَدَاهُمُ اللَّهُ ۖ وَأُولَٰٓئِكَ هُمْ أُولُوا الْأَلْبَابِ ⑱

१९. ती व्यक्तिहरू जसले (हाम्रो) कुरा सुन्छन् र त्यसबाट उत्कृष्ट (आदेश) को पालना गर्छन् । ती उनै व्यक्तिहरू नै हुन जसलाई अल्लाहले सन्मार्ग देखाएका छन्, तथा यिनीहरू नै बुद्धिमान मानिसहरू हुन् ।

أَفَمَنْ حَقَّ عَلَيْهِ كَلِمَةُ الْعَذَابِ أَفَأَنتَ تُنقِذُ مَن فِي النَّارِ ⑲

२०. जुन व्यक्तिविरुद्ध दण्डको भविष्यवाणी पूर्ण भएको छ के त्यो व्यक्ति (बच्ने योग्य) हुन सक्छ र? के तिमी अग्निमा परेको

व्यक्तिलाई बचाउन सक्छौ र?

لَكِنِ الَّذِيْنَ اتَّقَوْا رَبَّهُمْ لَهُمْ غُرَفٌ مِّنْ فَوْقِهَا غُرَفٌ مَّبْنِيَّةٌ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ وَعْدَ اللّٰهِ لَا يُخْلِفُ اللّٰهُ الْمِيْعَادَ ﴿٢١﴾

२१. परन्तु जुन व्यक्तिहरू आफ्ना प्रतिपालकसित डराउँछन् । तिनीहरूका निम्ति तलामाथि तला भएका उच्च गृहहरू निर्माण गरिनेछन् र त्यहाँ माथि तला थपिनेछन् र त्यसमनि नहरहरू बगिरहेका हुनेछन् । यो अल्लाहले दिएको वचन हो, (र) अल्लाहले कदापि (आफ्नो) वचन भङ्ग गर्दैनन्

اَلَمْ تَرَ اَنَّ اللّٰهَ اَنْزَلَ مِنَ السَّمَآءِ مَآءً فَسَلَكَهٗ يَنَابِيْعَ فِي الْاَرْضِ ثُمَّ يُخْرِجُ بِهٖ زَرْعًا مُّخْتَلِفًا اَلْوَانُهٗ ثُمَّ يَهِيْجُ فَتَرٰىهُ مُصْفَرًّا ثُمَّ يَجْعَلُهٗ حُطَامًا اِنَّ فِيْ ذٰلِكَ لَذِكْرٰى لِاُولِي الْاَلْبَابِ ﴿٢٢﴾

२२. अल्लाहले आकाशबाट पानी बर्साउँछन्, तथा त्यसलाई खोलाहरूस्वरुप पृथ्वीमा बगाउँछन् तथा त्यसबाट विभिन्न रङ्गका वनस्पतिहरू, (खेती) हरू उमार्छन् भन्ने कुरा तिमीलाई थाहा छैन र? तथा तिमीले तिनीहरूलाई पाक्न लागेपछि पहेलो रङ्गमा परिवर्तन भएको देख्छौ, त्यसपछि उनले त्यसलाई शुष्क काटेको परालमा परिवर्तन गर्छन् । यसमा बुद्धिमान मानिसहरूका निम्ति निश्चयपूर्वक एउटा उपदेश रहेको छ ।

اَفَمَنْ شَرَحَ اللّٰهُ صَدْرَهٗ لِلْاِسْلَامِ فَهُوَ عَلٰى نُوْرٍ مِّنْ رَّبِّهٖ فَوَيْلٌ لِّلْقٰسِيَةِ قُلُوْبُهُمْ مِّنْ ذِكْرِ اللّٰهِ اُولٰٓئِكَ فِيْ ضَلٰلٍ مُّبِيْنٍ ﴿٢٣﴾

२३. अतः जसको छातीलाई अल्लाहले इस्लाम (मान्नका) निम्ति खोलिदिएका छन्, फलस्वरूप उसलाई आफ्ना प्रतिपालकका तर्फबाट ज्योति प्राप्त भएको छ, के त्यो व्यक्ति (अविश्वासको अन्धकारमा छाम्दै हिँड्ने व्यक्तिसदृश) हुन सक्छ र? अतः ती व्यक्तिहरूमाथि धिक्कार छ जसको हृदयले अल्लाहको स्मरणलाई कठोर (कार्य) मान्छ । ती व्यक्तिहरू स्पष्टरूपमा पथभ्रष्ट हुन पुगेका छन् ।

اَللّٰهُ نَزَّلَ اَحْسَنَ الْحَدِيْثِ كِتٰبًا مُّتَشَابِهًا مَّثَانِيَ تَقْشَعِرُّ مِنْهُ جُلُوْدُ الَّذِيْنَ يَخْشَوْنَ رَبَّهُمْ ثُمَّ تَلِيْنُ جُلُوْدُهُمْ وَقُلُوْبُهُمْ اِلٰى ذِكْرِ اللّٰهِ ذٰلِكَ هُدَى اللّٰهِ

२४. अल्लाहले एउटा (यस्तो) पुस्तक(को रूपमा) सर्वोत्तम सन्देश अवतीर्ण गरेका छन्, जसका आयातहरू (श्लोकहरू) परस्पर समर्थक (तथा विभिन्न रूपमा) पुनरावृत्ति हुनेगर्छन् जसबाट आफ्ना प्रतिपालकसित

يَهْدِيْ بِهٖ مَنْ يَّشَآءُ ۭ وَمَنْ يُّضْلِلِ اللّٰهُ فَمَا لَهٗ مِنْ هَادٍ ﴿٢٣﴾

डराउने व्यक्तिहरूको अङ्ग-प्रत्यङ्ग काँप्न लाग्छ, त्यसपछि तिनीहरूको चर्म र हृदय अल्लाहको स्मरणले नरम हुन पुग्छ । अल्लाहको मार्गदर्शन यही नै रहेको छ, त्यसद्वारा उनले जसलाई चाहन्छन् मार्ग प्रदर्शन गर्छन् । तथा जसलाई अल्लाहले पथभ्रष्ट घोषित गर्छन्– उसले कुनै मार्गदर्शक पाउनेछैन ।

اَفَمَنْ يَّتَّقِيْ بِوَجْهِهٖ سُوْۗءَ الْعَذَابِ يَوْمَ الْقِيٰمَةِ ۭ وَقِيْلَ لِلظّٰلِمِيْنَ ذُوْقُوْا مَا كُنْتُمْ تَكْسِبُوْنَ ﴿٢٤﴾

२५. अत: पुनरुत्थानका दिन कठोर दण्डबाट बच्न जसले आफ्नै मुखलाई ढाल बनाउँछ के त्यो व्यक्ति (एउटा सुरक्षित व्यक्तिसदृश) हुन सक्छ र? तथा अत्याचारीहरूलाई के भनिनेछ भने, "जुन कुरा तिमीहरूले आर्जन गर्ने गरेका थियौ त्यो चाख ।"

كَذَّبَ الَّذِيْنَ مِنْ قَبْلِهِمْ فَاَتٰىهُمُ الْعَذَابُ مِنْ حَيْثُ لَا يَشْعُرُوْنَ ﴿٢٥﴾

२६. तिनीहरूभन्दा पहिलाका मानिसहरूले (पनि हाम्रा सन्देशवाहकहरूलाई) अस्वीकार गरेका थिए, अत: तिनीहरूमाथि त्यसतर्फबाट दण्ड बर्स्यो जसबाट तिनीहरू अनभिज्ञ थिए ।

فَاَذَاقَهُمُ اللّٰهُ الْخِزْيَ فِي الْحَيٰوةِ الدُّنْيَا ۚ وَلَعَذَابُ الْاٰخِرَةِ اَكْبَرُ ۘ لَوْ كَانُوْا يَعْلَمُوْنَ ﴿٢٦﴾

२७. अत: अल्लाहले सांसारिक जीवनमा तिनीहरूलाई तिरस्कृत तुल्याए तथा यदि तिनीहरूलाई ज्ञात भए परलोकको दण्ड ता निश्चयपूर्वक अझ ठूलो हुनेछ ।

وَلَقَدْ ضَرَبْنَا لِلنَّاسِ فِيْ هٰذَا الْقُرْاٰنِ مِنْ كُلِّ مَثَلٍ لَّعَلَّهُمْ يَتَذَكَّرُوْنَ ﴿٢٧﴾

२८. तथा यस कुरानमा हामीले निश्चयपूर्वक मानिसहरूका निम्ति सम्पूर्ण प्रकारका दृष्टान्तहरू वर्णन गरेका छौं, ताकि तिनीहरूले उपदेश ग्रहण गरून् ।

قُرْاٰنًا عَرَبِيًّا غَيْرَ ذِيْ عِوَجٍ لَّعَلَّهُمْ يَتَّقُوْنَ ﴿٢٨﴾

२९. (हामीले) यस कुरानलाई पूर्ण परिष्कार (अवतीर्ण गरेका छौं) । (यसमा) कुनै प्रकारको कुटिलता छैन, ताकि तिनीहरू धर्मनिष्ठ बनून् ।

ضَرَبَ اللّٰهُ مَثَلًا رَّجُلًا فِيْهِ شُرَكَآءُ مُتَشٰكِسُوْنَ وَرَجُلًا سَلَمًا لِّرَجُلٍ ؕ هَلْ يَسْتَوِيٰنِ مَثَلًا ؕ اَلْحَمْدُ لِلّٰهِ ۚ بَلْ اَكْثَرُهُمْ لَا يَعْلَمُوْنَ ﴿٢٩﴾

३०. अल्लाह एउटा यस्तो व्यक्तिको उपमा दिन्छन् जसका परस्परविरोधी धेरै स्वामीहरू रहेका छन्, तथा अन्य एउटा यस्तो व्यक्ति (को जो) पूर्णरूपमा एउटै मानिसको रहेको छ । के ती दुबै व्यक्तिहरू उदाहरणस्वरुप एक समान हुन सक्छन् र? सम्पूर्ण प्रशंसाका स्वामी अल्लाह नै रहेका छन् । परन्तु तिनीहरूमध्ये अधिकतर व्यक्तिहरू जान्दैनन्

اِنَّكَ مَيِّتٌ وَّاِنَّهُمْ مَّيِّتُوْنَ ﴿٣٠﴾

३१. तिम्रो निश्चयपूर्वक मृत्यु हुनेछ, तथा तिनीहरू (पनि) अवश्य मर्नेछन् ।

ثُمَّ اِنَّكُمْ يَوْمَ الْقِيٰمَةِ عِنْدَ رَبِّكُمْ تَخْتَصِمُوْنَ ﴿٣١﴾

३२. त्यसपछि पुनरुत्थानका दिन तिमीहरू आफ्ना प्रतिपालकका सामुन्ने अवश्य परस्पर वादविवाद गर्नेछौ ।

فَمَنْ اَظْلَمُ مِمَّنْ كَذَبَ عَلَى اللّٰهِ وَكَذَّبَ بِالصِّدْقِ اِذْ جَآءَهٗ ؕ اَلَيْسَ فِيْ جَهَنَّمَ مَثْوًى لِّلْكٰفِرِيْنَ ﴿٣٢﴾

३३. अतः जसले अल्लाहविरुद्ध मिथ्या गढ्छ अथवा त्यससमक्ष सत्यको आगमन भएपश्चात् त्यसलाई अस्वीकार गर्छ त्यो व्यक्तिभन्दा अधिक अन्यायी को हुन सक्छ र? के अविश्वासीहरूको ठेगाना (निवासस्थान) नर्कमा छैन र?

وَالَّذِيْ جَآءَ بِالصِّدْقِ وَصَدَّقَ بِهٖٓ اُولٰٓئِكَ هُمُ الْمُتَّقُوْنَ ﴿٣٣﴾

३४. परन्तु त्यो व्यक्ति, जसले सत्य लिएर आएको छ, तथा त्यो व्यक्ति जसले) त्यसलाई (त्यहीरूपमा) साक्षी दिन्छ– यस्ता व्यक्तिहरू नै धर्मनिष्ठ रहेका छन् ।

لَهُمْ مَّا يَشَآءُوْنَ عِنْدَ رَبِّهِمْ ؕ ذٰلِكَ جَزٰٓؤُا الْمُحْسِنِيْنَ ﴿٣٤﴾

३५. तिनीहरूले जे इच्छा गर्नेछन् आफ्ना प्रतिपालकका जुनाफमा त्यसलाई प्राप्त गर्नेछन्, पुण्यकर्मीहरूको यही नै प्रतिदान रहेको छ ।

لِيُكَفِّرَ اللّٰهُ عَنْهُمْ اَسْوَاَ الَّذِيْ عَمِلُوْا وَيَجْزِيَهُمْ اَجْرَهُمْ بِاَحْسَنِ الَّذِيْ كَانُوْا يَعْمَلُوْنَ ﴿٣٥﴾

३६. ताकि अल्लाहले तिनीहरूले गरेका कार्यहरूको कु (परिणामलाई) तिनीहरूबाट दूर गरून् तथा तिनीहरूका कार्यहरूमध्ये सर्वोत्तम कार्यहरूअनुसार नै तिनीहरूलाई

प्रतिदान प्रदान गरून् ।

أَلَيْسَ اللَّهُ بِكَافٍ عَبْدَهُ ۖ وَيُخَوِّفُونَكَ بِالَّذِينَ مِنْ دُونِهِ ۚ وَمَنْ يُضْلِلِ اللَّهُ فَمَا لَهُ مِنْ هَادٍ ﴿٣٦﴾

३७. के अल्लाह आफ्नो सेवकका निम्ति पर्याप्त छैनन् र? तथापि तिनीहरू तिमीलाई उनीबाहेक अन्य वस्तुहरूद्वारा त्रासित गर्न खोज्छन् । तथा जसलाई अल्लाहले पथभ्रष्ट घोषित गर्छन्– त्यस व्यक्तिका निम्ति कोही मार्गदर्शक रहेको छैन ।

وَمَنْ يَهْدِ اللَّهُ فَمَا لَهُ مِنْ مُضِلٍّ ۗ أَلَيْسَ اللَّهُ بِعَزِيزٍ ذِي انْتِقَامٍ ﴿٣٧﴾

३८. तथा जसलाई अल्लाहले मार्ग प्रदर्शन गर्छन्– त्यस व्यक्तिलाई भने कसैले पथभ्रष्ट गर्न सक्दैन । के अल्लाह नै सर्वशक्तिमान, दण्ड र पुरस्कारका अधिकारी होइनन् र?

وَلَئِنْ سَأَلْتَهُمْ مَنْ خَلَقَ السَّمَاوَاتِ وَالْأَرْضَ لَيَقُولُنَّ اللَّهُ ۚ قُلْ أَفَرَأَيْتُمْ مَا تَدْعُونَ مِنْ دُونِ اللَّهِ إِنْ أَرَادَنِيَ اللَّهُ بِضُرٍّ هَلْ هُنَّ كَاشِفَاتُ ضُرِّهِ أَوْ أَرَادَنِي بِرَحْمَةٍ هَلْ هُنَّ مُمْسِكَاتُ رَحْمَتِهِ ۚ قُلْ حَسْبِيَ اللَّهُ ۖ عَلَيْهِ يَتَوَكَّلُ الْمُتَوَكِّلُونَ ﴿٣٨﴾

३९. "आकाशमण्डल र पृथ्वीलाई कसले सृष्टि गऱ्यो?" भनी यदि तिमीले तिनीहरूलाई सोधेमा, तिनीहरूले के भन्नेछन् भने, 'अल्लाहले' । तिमी भन, "तिमीहरू के ठान्छौ, अल्लाहले यदि मलाई कुनै हानि पुऱ्याउन चाहेमा उनलाई छाडी जसलाई तिमीहरू पुकार्ने गर्छौ के तिनीहरूले उनले पुऱ्याएको चोटलाई मेटाउन सक्छन् र? अथवा उनले यदि ममाथि कृपा गर्न चाहेमा, के तिनीहरूले उनको कृपालाई रोक्न सक्छन् र? तिमी भन, "मेरा निम्ति अल्लाह नै पर्याप्त रहेका छन् । भरोसा गर्ने व्यक्तिहरूले उनीमाथि नै भरोसा राख्छन् ।"

قُلْ يَا قَوْمِ اعْمَلُوا عَلَىٰ مَكَانَتِكُمْ إِنِّي عَامِلٌ ۖ فَسَوْفَ تَعْلَمُونَ ﴿٣٩﴾

४०. तिमी भन, "हे मेरा मानिसहरू हो, तिमीहरू (यथासम्भव) कार्य गर, म (पनि) कार्यरत छु, तिमीहरूले शीघ्र नै जान्नेछौ,

مَنْ يَأْتِيهِ عَذَابٌ يُخْزِيهِ وَيَحِلُّ عَلَيْهِ عَذَابٌ مُقِيمٌ ﴿٤٠﴾

४१. (अर्थात्) कसमाथि यस्तो दण्ड बर्सने गर्छ जसले त्यसलाई अपमानित तुल्याउँछ, तथा कसमाथि चिरस्थायी दण्ड अवतीर्ण हुन्छ ।"

४२. हामीले वास्तवमा तिमीप्रति सत्यले परिपूर्ण यो पुस्तक मानवजातिको (कल्याणका) निम्ति अवतीर्ण गरेका छौं । अतः जसले मार्गदर्शनको अनुसरण गर्छ त्यसले आफ्नै आत्माको कल्याणका निम्ति (त्यसको अनुसरण) गर्छ, तथा जो व्यक्ति पथभ्रष्ट हुन्छ, त्यो आफ्नै अनिष्ट साधन गर्न पथभ्रष्ट हुन्छ । तथा तिमी तिनीहरूमाथि संरक्षकस्वरूप रहेका छैनौ ।

إِنَّا أَنزَلْنَا عَلَيْكَ الْكِتَابَ لِلنَّاسِ بِالْحَقِّ ۖ فَمَنِ اهْتَدَىٰ فَلِنَفْسِهِ ۖ وَمَن ضَلَّ فَإِنَّمَا يَضِلُّ عَلَيْهَا ۖ وَمَا أَنتَ عَلَيْهِم بِوَكِيلٍ ﴿٤١﴾ ع

४३. अल्लाहले तब जीवित प्राणीको प्राण (आत्मा) लिन्छन् जब उनीहरूको मरणको समय उपस्थित हुन्छ, तथा जसको मृत्युसमय आएको हुँदैन तिनीहरूको (पनि) निद्रावस्थामा -लिने गर्छन्) । त्यसपछि जसको मृत्युको उनले निर्णय गर्छन् तिनीहरूको (प्राणलाई) रोकेर राख्छन् तथा अन्यहरूलाई एउटा निर्धारित समयसम्मका निम्ति (फर्काएर) पठाउँछन् । यस कुरामा चिन्तन-मनन गर्ने व्यक्तिहरूका निम्ति निश्चयपूर्वक चिह्नहरू रहेका छन् ।

اللَّهُ يَتَوَفَّى الْأَنفُسَ حِينَ مَوْتِهَا وَالَّتِي لَمْ تَمُتْ فِي مَنَامِهَا ۖ فَيُمْسِكُ الَّتِي قَضَىٰ عَلَيْهَا الْمَوْتَ وَيُرْسِلُ الْأُخْرَىٰ إِلَىٰ أَجَلٍ مُّسَمًّى ۚ إِنَّ فِي ذَٰلِكَ لَآيَاتٍ لِّقَوْمٍ يَتَفَكَّرُونَ ﴿٤٢﴾

४४. के तिनीहरूले अल्लाहलाई छाडी अन्य सिफारिसकर्ताहरू बनाएका छन्? तिमी भन, “के यद्यपि तिनीहरूमा कुनै शक्ति नहोस् अथवा न तिनीहरूमा कुनै चतुर्याई नै होस् तथापि?”

أَمِ اتَّخَذُوا مِن دُونِ اللَّهِ شُفَعَاءَ ۚ قُلْ أَوَلَوْ كَانُوا لَا يَمْلِكُونَ شَيْئًا وَلَا يَعْقِلُونَ ﴿٤٣﴾

४५. तिमी भन, “सिफारिसको सम्पूर्ण अधिकार अल्लाहकै हातमा रहेको छ । आकाशमण्डल र पृथ्वीको राज्य उनकै रहेको छ । तथा अन्तमा तिमीहरूलाई उनीतर्फै फर्काएर लगिनेछ ।”

قُل لِّلَّهِ الشَّفَاعَةُ جَمِيعًا ۖ لَّهُ مُلْكُ السَّمَاوَاتِ وَالْأَرْضِ ۖ ثُمَّ إِلَيْهِ تُرْجَعُونَ ﴿٤٤﴾

४६. तथा जब एकमात्र अल्लाहको उल्लेख गरिन्छ (तब) परलोकप्रति विश्वास नगर्ने व्यक्तिहरूको हृदय घृणावश संकुचित हुन पुग्छ, परन्तु जब उनलाई छाडी अन्यान्य

وَإِذَا ذُكِرَ اللَّهُ وَحْدَهُ اشْمَأَزَّتْ قُلُوبُ الَّذِينَ لَا يُؤْمِنُونَ بِالْآخِرَةِ ۖ وَإِذَا ذُكِرَ الَّذِينَ مِن دُونِهِ إِذَا هُمْ يَسْتَبْشِرُونَ ﴿٤٥﴾

वस्तुहरूको उल्लेख गरिन्छ, (तब) सुन, तिनीहरू आनन्दित हुन्छन् ।

قُلِ اللّٰهُمَّ فَاطِرَ السَّمٰوٰتِ وَالْاَرْضِ عٰلِمَ الْغَيْبِ وَالشَّهَادَةِ اَنْتَ تَحْكُمُ بَيْنَ عِبَادِكَ فِيْ مَا كَانُوْا فِيْهِ يَخْتَلِفُوْنَ ﴿٤٧﴾

४७. तिमी भन, "हे आकाशमण्डल र पृथ्वीका स्रष्टा, अदृशय र दृश्य कुराहरूका ज्ञाता, अल्लाह ! -एकमात्र) तिमी नै आफ्ना सेवकहरूका बीचमा तिनीहरूले गर्ने गरेका मतभेदहरूका सम्बन्धमा निर्णय गर्नेछौ ।"

وَلَوْ اَنَّ لِلَّذِيْنَ ظَلَمُوْا مَا فِي الْاَرْضِ جَمِيْعًا وَّمِثْلَهٗ مَعَهٗ لَافْتَدَوْا بِهٖ مِنْ سُوْٓءِ الْعَذَابِ يَوْمَ الْقِيٰمَةِ ۚ وَبَدَا لَهُمْ مِّنَ اللّٰهِ مَا لَمْ يَكُوْنُوْا يَحْتَسِبُوْنَ ﴿٤٨﴾

४८. तथा यदि अत्याचारीहरू पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरू र थप त्यति नै वस्तुका स्वामी रहेका भएमा पुनरुत्थानका दिन ती सबै कुरा दिएर निश्चयपूर्वक स्वयम्लाई छुटाउने (प्रयास) गर्ने थिए, परन्तु अल्लाहको तर्फबाट तिनीहरूमाथि त्यो कुरो प्रकट हुनेछ जसबारे तिनीहरूले कहिल्यै सोचेका थिएनन् ।

وَبَدَا لَهُمْ سَيِّاٰتُ مَا كَسَبُوْا وَحَاقَ بِهِمْ مَّا كَانُوْا بِهٖ يَسْتَهْزِءُوْنَ ﴿٤٩﴾

४९. तथा तिनीहरूको कमाइको भयानक (परिणाम) तिनीहरूसमक्ष प्रकट हुनेछ तथा जुन कुराको तिनीहरू ठट्टा उडाउने गर्थे त्यसैले तिनीहरूलाई गाँज्नेछ ।

فَاِذَا مَسَّ الْاِنْسَانَ ضُرٌّ دَعَانَا ۡ ثُمَّ اِذَا خَوَّلْنٰهُ نِعْمَةً مِّنَّا ۙ قَالَ اِنَّمَآ اُوْتِيْتُهٗ عَلٰى عِلْمٍ ۭ بَلْ هِيَ فِتْنَةٌ وَّلٰكِنَّ اَكْثَرَهُمْ لَا يَعْلَمُوْنَ ﴿٥٠﴾

५०. तथा मानिसलाई जब सङ्कटले छुन्छ, उसले हामीलाई पुकार्छ । परन्तु जब हामी त्यसप्रति आफ्नो जुनाफबाट कुनै अनुग्रह (वर्षण) गर्छौं, उसले भन्छ, "यो ता मलाई आफ्नै ज्ञानको आधारमा प्राप्त भएको हो ।" होइन, (अपितु) त्यो ता केवल एउटा परीषास्वरूप हो, परन्तु तिनीहरूमध्ये अधिकतर व्यक्तिहरूले बुझ्दैनन् ।

قَدْ قَالَهَا الَّذِيْنَ مِنْ قَبْلِهِمْ فَمَآ اَغْنٰى عَنْهُمْ مَّا كَانُوْا يَكْسِبُوْنَ ﴿٥١﴾

५१. निश्चय नै तिनीहरूभन्दा पहिलाका मानिसहरूले (समेत) त्यही कुरा भनेका थिए, तथापि तिनीहरूले कमाएको कुनै कुराले तिनीहरूलाई केही लाभ पुऱ्याएन,

५२. अत: उनीहरूको कमाइको भयानक (परिणाम) ले उनीहरूलाई समात्यो, तथा यी (अविश्वासीहरू) मध्ये जसले अन्यायपूर्ण कार्य गर्छन्– तिनीहरूलाई पनि तिनीहरूको कमाइको भयानक (परिणाम) ले अवश्य समात्नेछ । तिनीहरू उम्कन सक्नेछैनन् ।

فَأَصَابَهُمْ سَيِّئَاتُ مَا كَسَبُوا ۚ وَالَّذِينَ ظَلَمُوا مِنْ هَٰؤُلَاءِ سَيُصِيبُهُمْ سَيِّئَاتُ مَا كَسَبُوا ۙ وَمَا هُمْ بِمُعْجِزِينَ ﴿٥٢﴾

५३. अल्लाहले जसका निम्ति इच्छा गर्छन् त्यसका निम्ति जीवनवृत्ति विस्तृत तुल्याउँछन् तथा (जसका निम्ति उनले इच्छा गर्छन् त्यसलाई) सङ्कीर्ण तुल्याउँछन् भन्ने कुराको तिनीहरूलाई ज्ञान छैन र? वस्तुत: विश्वासी व्यक्तिहरूका निम्ति यस (कुरा)मा चिह्नहरू रहेका छन् ।

أَوَلَمْ يَعْلَمُوا أَنَّ اللَّهَ يَبْسُطُ الرِّزْقَ لِمَنْ يَشَاءُ وَيَقْدِرُ ۚ إِنَّ فِي ذَٰلِكَ لَآيَاتٍ لِقَوْمٍ يُؤْمِنُونَ ﴿٥٣﴾

५४. तिमी भन, "हे मेरा आफ्नै आत्मामाथि अन्याय गर्ने सेवकहरू हो ! अल्लाहको करुणाबाट निराश हुने नगर, अल्लाहले निश्चय नै सम्पूर्ण पाप क्षमा गरिदिन्छन् । वस्तुत: उनी परम क्षमाशील, परम करुणाशील छन् ।

قُلْ يَا عِبَادِيَ الَّذِينَ أَسْرَفُوا عَلَىٰ أَنْفُسِهِمْ لَا تَقْنَطُوا مِنْ رَحْمَةِ اللَّهِ ۚ إِنَّ اللَّهَ يَغْفِرُ الذُّنُوبَ جَمِيعًا ۚ إِنَّهُ هُوَ الْغَفُورُ الرَّحِيمُ ﴿٥٤﴾

५५. "तथा तिमीहरू आफ्ना प्रतिपालकतर्फ झुक र तिमीहरूमाथि दण्डको आगमन हुनभन्दा अघि नै उनका आज्ञाकारी बन, त्यस (दण्ड) को आगमनपश्चात् (भने) तिमीहरूले कुनै सहयोग पाउने छैनौ ।

وَأَنِيبُوا إِلَىٰ رَبِّكُمْ وَأَسْلِمُوا لَهُ مِنْ قَبْلِ أَنْ يَأْتِيَكُمُ الْعَذَابُ ثُمَّ لَا تُنْصَرُونَ ﴿٥٥﴾

५६. तथा तिमीहरू अनभिज्ञ र असावधान रहेका अवस्थामा अकस्मात् तिमीहरूमाथि दण्डको आगमन हुनुअघि नै तिमीहरूका प्रतिपालकका तर्फबाट तिमीहरूप्रति अवतीर्ण भएको (शिक्षाको) उत्तम उपदेशहरूको अनुसरण गर,

وَاتَّبِعُوا أَحْسَنَ مَا أُنْزِلَ إِلَيْكُمْ مِنْ رَبِّكُمْ مِنْ قَبْلِ أَنْ يَأْتِيَكُمُ الْعَذَابُ بَغْتَةً وَأَنْتُمْ لَا تَشْعُرُونَ ﴿٥٦﴾

५७. कहीं कुनै आत्माले के नभनोस् भने, "अल्लाहको दृष्टिअन्तर्गत रहेर पनि मैले (आफ्नो कर्तव्यप्रति) अवहेलना गरें, त्यसैले

أَنْ تَقُولَ نَفْسٌ يَا حَسْرَتَىٰ عَلَىٰ مَا فَرَّطْتُ فِي جَنْبِ اللَّهِ وَإِنْ كُنْتُ لَمِنَ السَّاخِرِينَ ﴿٥٧﴾

मप्रति धिक्कार छ ! तथा म निश्चयपूर्वक उपहास गर्ने व्यक्तिहरूमध्ये (एक) रहेको थिएँ"

أَوْ تَقُولَ لَوْ أَنَّ ٱللَّهَ هَدَىٰنِى لَكُنتُ مِنَ ٱلْمُتَّقِينَ ﴿٥٨﴾

५८. अथवा त्यसले के पनि नभनोस् भने, "यदि अल्लाहले मलाई मार्ग देखाएका भएता, म निश्चय नै धर्मनिष्ठ व्यक्तिहरूमध्ये (सामेल) हुने थिएँ,"

أَوْ تَقُولَ حِينَ تَرَى ٱلْعَذَابَ لَوْ أَنَّ لِى كَرَّةً فَأَكُونَ مِنَ ٱلْمُحْسِنِينَ ﴿٥٩﴾

५९. अथवा जब त्यसले दण्ड देख्नेछ (तब) के पनि नभनोस् भने, "यदि मलाई एकपटक (पृथ्वीतर्फ) फर्कने मौका मिलेको भए, म अवश्य पुण्यकर्मी व्यक्तिहरूमा (सामेल) हुने थिएँ !"

بَلَىٰ قَدْ جَآءَتْكَ ءَايَٰتِى فَكَذَّبْتَ بِهَا وَٱسْتَكْبَرْتَ وَكُنتَ مِنَ ٱلْكَٰفِرِينَ ﴿٦٠﴾

६०. (अल्लाहले उत्तर दिनेछन्), "सुन, तिमी समक्ष मेरा चिह्नहरू आएका थिए, परन्तु तिनीहरूसित तिमीले मिथ्या कुराहरूसरह व्यवहार गऱ्यौ तथा तिमीले अहङ्कार गऱ्यौ, र तिमी अविश्वासीहरूमध्ये (सामेल) हुन पुग्यौ ।"

وَيَوْمَ ٱلْقِيَٰمَةِ تَرَى ٱلَّذِينَ كَذَبُوا۟ عَلَى ٱللَّهِ وُجُوهُهُم مُّسْوَدَّةٌ ۚ أَلَيْسَ فِى جَهَنَّمَ مَثْوًى لِّلْمُتَكَبِّرِينَ ﴿٦١﴾

६१. तथा पुनरुत्थानका दिन तिमीले अल्लाहविरुद्ध मिथ्या गढ्ने व्यक्तिहरूको मुहार कालो भएको देख्नेछौ । के अहङ्कारीका निम्ति नर्कमा निवासस्थान छैन र?

وَيُنَجِّى ٱللَّهُ ٱلَّذِينَ ٱتَّقَوْا۟ بِمَفَازَتِهِمْ لَا يَمَسُّهُمُ ٱلسُّوٓءُ وَلَا هُمْ يَحْزَنُونَ ﴿٦٢﴾

६२. अल्लाहले उनीसित डराउने व्यक्तिहरूलाई तिनीहरूको यथायोग्य सुरक्षा (र कृतार्थ)को स्थानतर्फ उद्धार गर्नेछन्), दुःखले र पीडाले तिनीहरूलाई स्पर्श गर्ने छैन, नत तिनीहरू (कहिल्यै) चिन्ताग्रस्त नै हुनेछन् ।

ٱللَّهُ خَٰلِقُ كُلِّ شَىْءٍ ۖ وَهُوَ عَلَىٰ كُلِّ شَىْءٍ وَكِيلٌ ﴿٦٣﴾

६३. अल्लाह सम्पूर्ण वस्तुहरूका सृष्टिकर्ता हुन्, तथा उनी नै सम्पूर्ण वस्तुहरूका संरक्षक (पनि) हुन् ।

لَهٗ مَقَالِيْدُ السَّمٰوٰتِ وَالْاَرْضِ ۚ وَالَّذِيْنَ كَفَرُوْا بِاٰيٰتِ اللّٰهِ اُولٰٓئِكَ هُمُ الْخٰسِرُوْنَ ﴿٦٣﴾

६४. आकाशमण्डल र पृथ्वीको कुञ्जी उनकै हातमा छ, तथा जसले अल्लाहका चिह्नहरूलाई अस्वीकार गर्छन्, वास्तवमा तिनीहरू नै घाटाग्रस्त व्यक्तिहरू हुन् ।

قُلْ اَفَغَيْرَ اللّٰهِ تَاْمُرُوْٓنِّيْٓ اَعْبُدُ اَيُّهَا الْجٰهِلُوْنَ ﴿٦٤﴾

६५. तिमी भन, “ए मूर्ख व्यक्तिहरू हो, के तिमीहरू मलाई अल्लाहबाहेक अन्य कुनै (उपास्य) को उपासना गर्ने आदेश दिन्छौ?”

وَلَقَدْ اُوْحِيَ اِلَيْكَ وَاِلَى الَّذِيْنَ مِنْ قَبْلِكَ ۚ لَئِنْ اَشْرَكْتَ لَيَحْبَطَنَّ عَمَلُكَ وَلَتَكُوْنَنَّ مِنَ الْخٰسِرِيْنَ ﴿٦٥﴾

६६. तथा तिमीभन्दा पहिलाका व्यक्तिहरूमाथि आकाशवाणी गरेझैं तिमीप्रति (के) आकाशवाणी गरिएको छ (भने), “यदि तिमीले (अल्लाहका) भागीदार तुल्यायौ भने तिम्रा कार्यहरू व्यर्थ जानेछन्, तथा तिमी अवश्य घाटाग्रस्त व्यक्तिहरूमध्येका (एक) हुन पुग्नेछौ ।”

بَلِ اللّٰهَ فَاعْبُدْ وَكُنْ مِّنَ الشّٰكِرِيْنَ ﴿٦٦﴾

६७. अपितु तिमी अल्लाहको उपासना गर, तथा कृतार्थ व्यक्तिहरूमा सामेल होउ ।

وَمَا قَدَرُوا اللّٰهَ حَقَّ قَدْرِهٖ ۖ وَالْاَرْضُ جَمِيْعًا قَبْضَتُهٗ يَوْمَ الْقِيٰمَةِ وَالسَّمٰوٰتُ مَطْوِيّٰتٌۢ بِيَمِيْنِهٖ ۚ سُبْحٰنَهٗ وَتَعٰلٰى عَمَّا يُشْرِكُوْنَ ﴿٦٧﴾

६८. तथा तिनीहरूले अल्लाहको प्रतापको (महानताको) यथोचित सम्मान गरेनन् । तथा पुनरुत्थानका दिन पृथ्वी पूर्वरूपमा उनको मुठीमा हुनेछ, यसै प्रकार आकाशमण्डल पनि उनकै दाहिने हातमा बेरिएको हुनेछ । उनी पवित्र छन्, तथा जुन कुराहरूलाई तिनीहरू उनका भागीदार बनाउँछन् तिनीहरूबाट उनी धेरैमाथि रहेका छन् ।

وَنُفِخَ فِي الصُّوْرِ فَصَعِقَ مَنْ فِي السَّمٰوٰتِ وَمَنْ فِي الْاَرْضِ اِلَّا مَنْ شَآءَ اللّٰهُ ۚ ثُمَّ نُفِخَ فِيْهِ اُخْرٰى فَاِذَا هُمْ قِيَامٌ يَّنْظُرُوْنَ ﴿٦٨﴾

६९. तथा बिगुल बजाइनेछ र आकाशमण्डलमा रहेका (सम्पूर्ण) प्राणीहरू र पृथ्वीमा रहेका (सम्पूर्ण) प्राणीहरूसमेत मुर्च्छित भएर (धर्तीमा लड्नेछन्), सिवाय ती व्यक्तिहरू, जसलाई अल्लाहले (बचाउन) चाहनेछन् । त्यसपछि त्यसलाई पुन: दोस्रोपटक बजाइनेछ, तथा हेर ! तिनीहरू

प्रतीक्षा गर्दै उभिन लाग्नेछन् ।

وَاَشۡرَقَتِ الۡاَرۡضُ بِنُوۡرِ رَبِّهَا وَوُضِعَ الۡكِتٰبُ وَجِایۡٓءَ بِالنَّبِیّٖنَ وَالشُّهَدَآءِ وَقُضِیَ بَیۡنَهُمۡ بِالۡحَقِّ وَهُمۡ لَا یُظۡلَمُوۡنَ ﴿۷۰﴾

७०. तथा पृथ्वी आफ्ना प्रतिपालकको प्रकाशद्वारा जगमगाउने छ र (तिनीहरूसमक्ष) पुस्तक (खोलेर) राखिनेछ, र नबीहरू र साक्षीहरूलाई उपस्थित गरिनेछ तथा तिनीहरूका बीचमा न्यायकासाथ निर्णय गरिदिइनेछ, र तिनीहरूमाथि अत्याचार हुनेछैन ।

وَوُفِّیَتۡ كُلُّ نَفۡسٍ مَّا عَمِلَتۡ وَهُوَ اَعۡلَمُ بِمَا یَفۡعَلُوۡنَ ﴿۷۱﴾ ع

७१. तथा हरेक आत्मालाई उसको कमाइअनुसार पूर्ण प्रतिदान प्रदान गरिनेछ । तथा तिनीहरूका कार्यहरूप्रति उनी पूर्णविदित छन् ।

وَسِیۡقَ الَّذِیۡنَ كَفَرُوۡۤا اِلٰی جَهَنَّمَ زُمَرًا ؕ حَتّٰۤی اِذَا جَآءُوۡهَا فُتِحَتۡ اَبۡوَابُهَا وَقَالَ لَهُمۡ خَزَنَتُهَاۤ اَلَمۡ یَاۡتِكُمۡ رُسُلٌ مِّنۡكُمۡ یَتۡلُوۡنَ عَلَیۡكُمۡ اٰیٰتِ رَبِّكُمۡ وَیُنۡذِرُوۡنَكُمۡ لِقَآءَ یَوۡمِكُمۡ هٰذَا ؕ قَالُوۡا بَلٰی وَلٰكِنۡ حَقَّتۡ كَلِمَةُ الۡعَذَابِ عَلَی الۡكٰفِرِیۡنَ ﴿۷۲﴾

७२. तथा अविश्वासीहरूलाई विभिन्न दलको रूपमा नर्कतर्फ हाँकिनेछ । अतः जब तिनीहरू त्यहाँ पुग्ने छन्; त्यहाँका ढोकाहरू खोलिनेछन् र त्यहाँका पालेहरूले तिनीहरूलाई भन्नेछन्, "के तिमीहरूसमक्ष तिमीहरूमध्येकै सन्देशवाहक आएका थिएनन्, जसले तिमीहरूलाई तिमीहरूका प्रतिपालकका निर्देशनहरू पढेर सुनाउँथे, तथा आजको दिन हुने साक्षात्कारबारे तिमीहरूलाई सावधान गर्थे?" तिनीहरूले भन्नेछन् । "हो, परन्तु अविश्वासीहरूविरुद्ध दण्डको भविष्यवाणी पूर्ण भएरै छाड्यो ।"

قِیۡلَ ادۡخُلُوۡۤا اَبۡوَابَ جَهَنَّمَ خٰلِدِیۡنَ فِیۡهَا ۚ فَبِئۡسَ مَثۡوَی الۡمُتَكَبِّرِیۡنَ ﴿۷۳﴾

७३. तब के भनिनेछ भने, "तिमीहरू नर्कका ढोकाहरूबाट त्यहाँ रहनका निम्ति प्रवेश गर । तथा अहङ्कारी व्यक्तिहरूको रहने ठेगाना अति नै निकृष्ट रहेको छ ।"

وَسِیۡقَ الَّذِیۡنَ اتَّقَوۡا رَبَّهُمۡ اِلَی الۡجَنَّةِ زُمَرًا ؕ حَتّٰۤی اِذَا جَآءُوۡهَا وَفُتِحَتۡ اَبۡوَابُهَا وَقَالَ لَهُمۡ خَزَنَتُهَا سَلٰمٌ عَلَیۡكُمۡ طِبۡتُمۡ فَادۡخُلُوۡهَا خٰلِدِیۡنَ ﴿۷۴﴾

७४. तथा आफ्ना प्रतिपालकसित डराउने व्यक्तिहरूलाई विभिन्न समूहको रूपमा स्वर्गतर्फ लगिनेछ । अतः जब तिनीहरू त्यहाँ पुग्नेछन् त्यसका ढोकाहरू खोलिनेछन्, तथा त्यसका पालेहरूले तिनीहरूलाई

भन्नेछन्, "तिमीहरूमाथि शान्ति वर्षण होस् ! तिमीहरू प्रसन्नताका साथ त्यहाँ सदा रहनका निम्ति प्रवेश गर,"

وَقَالُوا الْحَمْدُ لِلّٰهِ الَّذِيْ صَدَقَنَا وَعْدَهٗ وَاَوْرَثَنَا الْاَرْضَ نَتَبَوَّاُ مِنَ الْجَنَّةِ حَيْثُ نَشَآءُ ۚ فَنِعْمَ اَجْرُ الْعٰمِلِيْنَ ۝٧٤

७५. तथा तिनीहरूले भन्नेछन्, "सम्पूर्ण प्रशंसा उनै अल्लाहकै निम्ति रहेको छ जसले हामीसित गरेको आफ्नो बाचा पूर्ण गरेका छन्, तथा हामीलाई उत्तराधिकारस्वरूप यस्तो स्थान प्रदान गरेका छन् जहाँ हामी आफ्नो इच्छानुसार बगैंचामा बसोबास गर्नेछौं ।" अतः पुण्य कार्य गर्ने व्यक्तिहरूको प्रतिदान कति नै उत्तम रहेको छ !

وَتَرَى الْمَلٰٓئِكَةَ حَآفِّيْنَ مِنْ حَوْلِ الْعَرْشِ يُسَبِّحُوْنَ بِحَمْدِ رَبِّهِمْ ۚ وَقُضِيَ بَيْنَهُمْ بِالْحَقِّ وَقِيْلَ الْحَمْدُ لِلّٰهِ رَبِّ الْعٰلَمِيْنَ ۝٧٥

७६. तथा (त्यसदिन) तिमीले देवदूतहरूलाई सिंहासनका चारैतर्फ आफ्ना प्रतिपालकको प्रशंसाका साथ गुणगान गर्दै गरेको देख्नेछौ । तथा तिनीहरूका बीचमा न्यायका साथ निर्णय गरिनेछ । तथा के भनिनेछ भने, "सम्पूर्ण प्रशंसा विश्वब्रह्मण्डका स्वामी अल्लाहकै निम्ति रहेको छ ।"




## अल्-मोमिन्

(हिजरतअघि अवतरित)

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

२. हा मिम* ।

حٰمٓ ②

३. यस पुस्तकको अवतरण सर्वशक्तिमान, सर्वज्ञ अल्लाहका तर्फबाट भएको हो,

تَنْزِيْلُ الْكِتٰبِ مِنَ اللّٰهِ الْعَزِيْزِ الْعَلِيْمِ ③

४. उनी पाप क्षमाकारी र प्रायश्चित ग्रहणकारी, कठोर दण्डदाता, कृपाका सागर रहेका छन् । उनीबाहेक अन्य कोही उपास्य छैन । अन्तिम प्रत्यागमन उनीतर्फै हुनेछ ।

غَافِرِ الذَّنْبِ وَقَابِلِ التَّوْبِ شَدِيْدِ الْعِقَابِ ۙ ذِي الطَّوْلِ ۭ لَآ اِلٰهَ اِلَّا هُوَ ۭ اِلَيْهِ الْمَصِيْرُ ④

५. अविश्वासी व्यक्तिहरूबाहेक अन्य कसैले अल्लाहका निर्देशनहरूका सम्बन्धमा विवाद गर्दैनन् । अतः, पृथ्वीमा तिनीहरूको परि-भ्रमणले तिमीलाई धोकाग्रस्त नतुल्याओस् ।

مَا يُجَادِلُ فِيْٓ اٰيٰتِ اللّٰهِ اِلَّا الَّذِيْنَ كَفَرُوْا فَلَا يَغْرُرْكَ تَقَلُّبُهُمْ فِي الْبِلَادِ ⑤

६. यी (व्यक्तिहरू)भन्दा पहिला नूहका मानिसहरूले तथा तिनीहरूपछि अन्य विभिन्न समूहले हाम्रा चिह्नहरूलाई अस्वीकार गरेका थिए, तथा हरेक जातिले आ-आफ्ना सन्देशवाहकलाई पक्रने प्रयास गरेका थिए, तथा मिथ्या (तर्कहरू)द्वारा विवाद गर्ने गर्थे, ताकि त्यसद्वारा सत्यको खण्डन गर्न सकून् । अतः मैले तिनीहरूलाई समातें, तथा मेरो प्रतिशोध कस्तो (डरलाग्दो) थियो !

كَذَّبَتْ قَبْلَهُمْ قَوْمُ نُوْحٍ وَّالْاَحْزَابُ مِنْۢ بَعْدِهِمْ ۠ وَهَمَّتْ كُلُّ اُمَّةٍۢ بِرَسُوْلِهِمْ لِيَاْخُذُوْهُ وَجٰدَلُوْا بِالْبَاطِلِ لِيُدْحِضُوْا بِهِ الْحَقَّ فَاَخَذْتُهُمْ ۣ فَكَيْفَ كَانَ عِقَابِ ⑥

७. यस प्रकार अविश्वासीहरूका सम्बन्धमा तिनीहरू अग्निनिवासी हुन् भन्ने

وَكَذٰلِكَ حَقَّتْ كَلِمَتُ رَبِّكَ عَلَى الَّذِيْنَ كَفَرُوْٓا اَنَّهُمْ اَصْحٰبُ النَّارِ ⑦

---

* परम प्रशंसनीय, महिमामय (अल्लाह) ।

तिम्रो प्रतिपालकको वाणी सत्य साबित भयो ।

८. ती फरिस्ताहरू, जसले सिंहासन बहन गर्छन् तथा त्यसका छेउछाउमा रहेका फरिस्ताहरू, आफ्ना प्रतिपालकको प्रशंसाका साथ पवित्रता वर्णन गर्छन्, तथा उनीप्रति विश्वास गर्छन्, र विश्वासीजनका निम्ति (के भन्दै) क्षमायाचना गर्छन् (भने) : "हे हाम्रा प्रतिपालक , तिमीले सम्पूर्ण वस्तुहरूलाई (आफ्नो) करुणा र ज्ञानले घेरेका छौ । अतः जसले प्रायश्चित्त गर्छन् र तिम्रो मार्गको अनुसरण गर्छन् तिनीहरूलाई क्षमा प्रदान गर, तथा तिनीहरूलाई नर्कको दण्डबाट बचाउ ।

اَلَّذِيْنَ يَحْمِلُوْنَ الْعَرْشَ وَمَنْ حَوْلَهٗ يُسَبِّحُوْنَ بِحَمْدِ رَبِّهِمْ وَيُؤْمِنُوْنَ بِهٖ وَيَسْتَغْفِرُوْنَ لِلَّذِيْنَ اٰمَنُوْا ۚ رَبَّنَا وَسِعْتَ كُلَّ شَيْءٍ رَّحْمَةً وَّعِلْمًا فَاغْفِرْ لِلَّذِيْنَ تَابُوْا وَاتَّبَعُوْا سَبِيْلَكَ وَقِهِمْ عَذَابَ الْجَحِيْمِ ۝

९. हे हाम्रा प्रतिपालक, तिनीहरूलाई र साथै तिनीहरूका ती सद्‌गुणी पितृहरू र तिनीहरूका पत्नीहरू र तिनीहरूका सन्तानहरूलाई समेत ती चिरन्जीवी बगैंचाहरूमा दाखिल गर जसको तिमीले तिनीहरूलाई वचन दिएका छौ । निश्चय नै तिमी सर्वशक्तिमान, परम तत्वज्ञ छौ ।

رَبَّنَا وَاَدْخِلْهُمْ جَنّٰتِ عَدْنِ ِۨالَّتِيْ وَعَدْتَّهُمْ وَمَنْ صَلَحَ مِنْ اٰبَآئِهِمْ وَاَزْوَاجِهِمْ وَذُرِّيّٰتِهِمْ ۚ اِنَّكَ اَنْتَ الْعَزِيْزُ الْحَكِيْمُ ۝

१०. तथा तिनीहरूलाई कुकर्मबाट बचाउ, तथा जसलाई तिमीले त्यसदिन कुकर्महरूबाट बचाउँछौ – त्यसप्रति तिमीले अवश्य नै दया प्रदर्शन गर्‍यौ । तथा त्यो (निश्चयपूर्वक) ठूलो कृतकार्यता रहेको छ ।"

وَقِهِمُ السَّيِّاٰتِ ۚ وَمَنْ تَقِ السَّيِّاٰتِ يَوْمَئِذٍ فَقَدْ رَحِمْتَهٗ ۚ وَذٰلِكَ هُوَ الْفَوْزُ الْعَظِيْمُ ۝

११. अविश्वासीहरूसमक्ष (अवश्य के) घोषणा गरिनेछ (भने), "जब तिमीहरूलाई विश्वास स्थापनाका निम्ति आह्वान गरिन्थ्यो र तिमीहरू त्यसलाई अस्वीकार गर्थ्यौ तब अल्लाहको तिमीहरूप्रतिको घृणा तिमीहरूको स्वयम्‌माथि रहेको घृणाभन्दा अधिक ठूलो थियो ।"

اِنَّ الَّذِيْنَ كَفَرُوْا يُنَادَوْنَ لَمَقْتُ اللّٰهِ اَكْبَرُ مِنْ مَّقْتِكُمْ اَنْفُسَكُمْ اِذْ تُدْعَوْنَ اِلَى الْاِيْمَانِ فَتَكْفُرُوْنَ ۝

قَالُوا رَبَّنَا أَمَتَّنَا اثْنَتَيْنِ وَأَحْيَيْتَنَا اثْنَتَيْنِ فَاعْتَرَفْنَا بِذُنُوبِنَا فَهَلْ إِلَىٰ خُرُوجٍ مِنْ سَبِيلٍ ﴿١١﴾

१२. तिनीहरूले भन्नेछन्, "हे हाम्रा प्रतिपालक, तिमीले हामीलाई दुईपटक मृत्यु प्रदान गर्‍यौ, तथा दुईपटक जीवन दान गर्‍यौ, तथा अब हामी आफ्नो पाप स्वीकार गर्छौं । अत: के कुनै बच्ने मार्ग छ?"

ذَٰلِكُمْ بِأَنَّهُ إِذَا دُعِيَ اللَّهُ وَحْدَهُ كَفَرْتُمْ ۖ وَإِنْ يُشْرَكْ بِهِ تُؤْمِنُوا ۚ فَالْحُكْمُ لِلَّهِ الْعَلِيِّ الْكَبِيرِ ﴿١٢﴾

१३. त्यसो किन हुन्छ भने, जब अल्लाह एक हुन् भनी घोषणा गरिन्थ्यो तब तिमीहरू (त्यस आह्वानलाई) अस्वीकार गर्थ्यौ, परन्तु जब उनका साथमा भागीदारहरू खडा गरिन्थ्यो, तब तिमीहरू विश्वास गर्थ्यौ । परन्त (अन्तिम) निर्णय सर्वोच्च सर्वश्रेष्ठ अल्लाहकै हातमा रहेको छ ।"

هُوَ الَّذِي يُرِيكُمْ آيَاتِهِ وَيُنَزِّلُ لَكُمْ مِنَ السَّمَاءِ رِزْقًا ۚ وَمَا يَتَذَكَّرُ إِلَّا مَنْ يُنِيبُ ﴿١٣﴾

१४. ती उनी नै हुन्, जसले तिमीहरूलाई आफ्ना चिह्नहरू देखाउँछन्, तथा आकाशबाट तिमीहरूका निम्ति जीविका अवतीर्ण गर्छन्, परन्तु अल्लाहतर्फ झुक्ने व्यक्तिले मात्र ध्यान दिने गर्छ ।

فَادْعُوا اللَّهَ مُخْلِصِينَ لَهُ الدِّينَ وَلَوْ كَرِهَ الْكَافِرُونَ ﴿١٤﴾

१५. अत: तिमीहरू उनकै एकनिष्ठ आस्थावान बनी अल्लाहलाई पुकार्ने गर, यद्यपि अविश्वासीहरूले घृणा नै किन नगरून् ।

رَفِيعُ الدَّرَجَاتِ ذُو الْعَرْشِ يُلْقِي الرُّوحَ مِنْ أَمْرِهِ عَلَىٰ مَنْ يَشَاءُ مِنْ عِبَادِهِ لِيُنْذِرَ يَوْمَ التَّلَاقِ ﴿١٥﴾

१६. (उनी) परम मर्यादायुक्त परम सिंहासनका स्वामी (रहेका छन्) । उनले आफ्ना सेवकहरूमध्ये जसप्रति चाहन्छन् आफ्नो आदेशका साथ पवित्र आत्मा (पवित्र वाणी) अवतीर्ण गर्छन्, ताकि उसले (उनीसितको) साक्षात्कारको दिनबाट मानिसहरूलाई सावधान गरोस्,

يَوْمَ هُمْ بَارِزُونَ ۖ لَا يَخْفَىٰ عَلَى اللَّهِ مِنْهُمْ شَيْءٌ ۚ لِمَنِ الْمُلْكُ الْيَوْمَ ۖ لِلَّهِ الْوَاحِدِ الْقَهَّارِ ﴿١٦﴾

१७. त्यसदिन जब तिनीहरू (सबै) सामुन्ने उपस्थित हुनेछन्, तिनीहरूको कुनै कुरा अल्लाहबाट गुप्त रहनेछैन । "त्यसदिन कसको हातमा शासन सत्ता हुनेछ त?"

अद्वितीय, प्रबल अल्लाहकै (हातमा) ।

ٱلْيَوْمَ تُجْزَىٰ كُلُّ نَفْسٍۭ بِمَا كَسَبَتْ ۚ لَا ظُلْمَ ٱلْيَوْمَ ۚ إِنَّ ٱللَّهَ سَرِيعُ ٱلْحِسَابِ ﴿١٧﴾

१८. त्यसदिन हरेक आत्मालाई त्यसको कमाइको प्रतिदान प्रदान गरिनेछ । त्यसदिन कुनै अन्याय हुनेछैन । निश्चयनै, अल्लाह शीघ्र हिसाब लिने गर्छन् ।"

وَأَنذِرْهُمْ يَوْمَ ٱلْـَٔازِفَةِ إِذِ ٱلْقُلُوبُ لَدَى ٱلْحَنَاجِرِ كَـٰظِمِينَ ۚ مَا لِلظَّـٰلِمِينَ مِنْ حَمِيمٍ وَلَا شَفِيعٍ يُطَاعُ ﴿١٨﴾

१९. तथा तिनीहरूलाई त्यस निकट भन्दा निकट आउन लागेको दिनप्रति सावधान गर जब चिन्ताग्रस्त हृदय कण्ठमा आउनेछ । त्यसदिन अत्याचारीहरूको न कोही प्रियमित्र हुनेछन्, न त कुनै यस्तो सिफारिसकर्ता नै जसको ( सिफारिस) स्वीकार्य होस् ।

يَعْلَمُ خَآئِنَةَ ٱلْأَعْيُنِ وَمَا تُخْفِى ٱلصُّدُورُ ﴿١٩﴾

२०. उनले नेत्रको धोकाबाजीलाई र छातीले लुकाएका कुराहरूलाई जान्दछन् ।

وَٱللَّهُ يَقْضِى بِٱلْحَقِّ ۖ وَٱلَّذِينَ يَدْعُونَ مِن دُونِهِۦ لَا يَقْضُونَ بِشَىْءٍ ۗ إِنَّ ٱللَّهَ هُوَ ٱلسَّمِيعُ ٱلْبَصِيرُ ﴿٢٠﴾

२१. तथा अल्लाह न्यायका साथ निर्णय गर्ने गर्छन्, परन्तु उनीबाहेक जसलाई तिनीहरू पुकार्छन् तिनीहरूले कुनै निर्णय गर्दैनन् । अल्लाह निश्चय नै सर्वश्रोता, सर्वद्रष्टा छन् ।

أَوَلَمْ يَسِيرُوا۟ فِى ٱلْأَرْضِ فَيَنظُرُوا۟ كَيْفَ كَانَ عَـٰقِبَةُ ٱلَّذِينَ كَانُوا۟ مِن قَبْلِهِمْ ۚ كَانُوا۟ هُمْ أَشَدَّ مِنْهُمْ قُوَّةً وَءَاثَارًا فِى ٱلْأَرْضِ فَأَخَذَهُمُ ٱللَّهُ بِذُنُوبِهِمْ وَمَا كَانَ لَهُم مِّنَ ٱللَّهِ مِن وَاقٍ ﴿٢١﴾

२२. के तिनीहरूले पृथ्वीमा परिभ्रमण गरी तिनीहरूभन्दा पहिलाका मानिसहरूको अन्त कस्तो भएको थियो भन्ने कुरा देखेका छैनन् र? तिनीहरू यिनीहरूभन्दा अत्याधिक शक्तिसम्पन्न तथा पृथ्वीमा आफ्नो छाप छोड्ने दृष्टिकोणले पनि अधिक सशक्त व्यक्तिहरू थिए । परन्तु अल्लाहले तिनीहरूलाई तिनीहरूको पापका कारण विनाश गरे, तथा अल्लाहविरुद्ध तिनीहरूको कोही संरक्षक थिएन ।

ذَٰلِكَ بِأَنَّهُمْ كَانَت تَّأْتِيهِمْ رُسُلُهُم بِٱلْبَيِّنَـٰتِ فَكَفَرُوا۟ فَأَخَذَهُمُ ٱللَّهُ ۚ إِنَّهُۥ قَوِىٌّ شَدِيدُ ٱلْعِقَابِ ﴿٢٢﴾

२३. त्यसको कारण के थियो भने तिनीहरूसमक्ष तिनीहरूका सन्देशवाहकहरू स्पष्ट चिह्नहरू लिएर आएका थिए, परन्तु तिनीहरूले अविश्वास गरे, त्यसकारण

अल्लाहले तिनीहरूलाई ध्वस्त पारे । निश्चय नै उनी परम शक्तिशाली, दण्ड दिनमा अति कठोर छन् ।

२४. तथा निश्चय नै मूसालाई हामीले आफ्ना चिह्नहरू र स्पष्ट प्रमाणका साथ पठाएका थियौं,

وَلَقَدْ اَرْسَلْنَا مُوْسٰى بِاٰيٰتِنَا وَسُلْطٰنٍ مُّبِيْنٍ ﴿٢٣﴾

२५. फिरौन र हामान तथा कारुनतर्फ, परन्तु तिनीहरूले भने, "(यो ता) एउटा जादुगर र धोकेबाज व्यक्ति (हो) ।"

اِلٰى فِرْعَوْنَ وَهَامٰنَ وَقَارُوْنَ فَقَالُوْا سٰحِرٌ كَذَّابٌ ﴿٢٤﴾

२६. तथा उनी जब तिनीहरूसमक्ष हाम्रा तर्फबाट सत्य लिएर आए, तिनीहरूले भने, "यससित विश्वास गर्ने व्यक्तिहरूका पुत्रहरूको हत्या गर, र तिनीहरूका महिलाहरूलाई जीवित राख ।" परन्तु अविश्वासीहरूको षडयन्त्र निष्फल नै हुने गर्छ ।

فَلَمَّا جَآءَهُمْ بِالْحَقِّ مِنْ عِنْدِنَا قَالُوا اقْتُلُوْٓا اَبْنَآءَ الَّذِيْنَ اٰمَنُوْا مَعَهٗ وَاسْتَحْيُوْا نِسَآءَهُمْ ؕ وَمَا كَيْدُ الْكٰفِرِيْنَ اِلَّا فِيْ ضَلٰلٍ ﴿٢٥﴾

२७. तथा फिरौन भन्यो: "मलाई (एक्लै) छाड ताकि म मूसाको हत्या गरुं; तथा त्यसले आफ्नो प्रतिपालकलाई पुकारोस् । त्यसले तिमीहरूको धर्म परिवर्तन गरिदेला अथवा देशमा अशान्ति (र भ्रष्टाचार) सिर्जना गर्ला कि भनी म डराउँछु ।"

وَقَالَ فِرْعَوْنُ ذَرُوْنِيْٓ اَقْتُلْ مُوْسٰى وَلْيَدْعُ رَبَّهٗ ۚ اِنِّيْٓ اَخَافُ اَنْ يُّبَدِّلَ دِيْنَكُمْ اَوْ اَنْ يُّظْهِرَ فِى الْاَرْضِ الْفَسَادَ ﴿٢٦﴾

२८. तथा मूसाले भने, "म हिसाब-किताबको दिनप्रति विश्वास नगर्ने हरेक घमण्डी (व्यक्ति)बाट मेरा र तिमीहरूका प्रतिपालकको शरण याचना गर्छु ।"

وَقَالَ مُوْسٰٓى اِنِّيْ عُذْتُ بِرَبِّيْ وَرَبِّكُمْ مِّنْ كُلِّ مُتَكَبِّرٍ لَّا يُؤْمِنُ بِيَوْمِ الْحِسَابِ ﴿٢٧﴾

२९. तथा फिरौनका मानिसहरूमध्येको एकजना यस्तो विश्वासी व्यक्ति जसले आफ्नो आस्था गुप्त राखेको थियो, भन्यो, "मेरा प्रतिपालक ता अल्लाह नै हुन्," भनी एउटा व्यक्तिले भनेकै कारण तिमीहरू त्यसको हत्या गर्छौ त? वस्तुतः उसले तिमीहरूसमक्ष तिमीहरूका प्रतिपालकका

وَقَالَ رَجُلٌ مُّؤْمِنٌ ۖ مِّنْ اٰلِ فِرْعَوْنَ يَكْتُمُ اِيْمَانَهٗٓ اَتَقْتُلُوْنَ رَجُلًا اَنْ يَّقُوْلَ رَبِّيَ اللّٰهُ وَقَدْ جَآءَكُمْ بِالْبَيِّنٰتِ مِنْ رَّبِّكُمْ ؕ وَاِنْ يَّكُ

كَاذِبًا فَعَلَيْهِ كَذِبُهُ ۖ وَإِن يَكُ صَادِقًا يُصِبْكُم بَعْضُ الَّذِي يَعِدُكُمْ ۖ إِنَّ اللَّهَ لَا يَهْدِي مَنْ هُوَ مُسْرِفٌ كَذَّابٌ ﴿٢٩﴾

तर्फबाट स्पष्ट प्रमाणहरू ल्याएको छ । तथा यदि उ भुट्टो व्यक्ति भएमा उसको भुट्टापन (को पाप) उसैलाई लाग्नेछ, परन्तु यदि उ साँचो व्यक्ति भएमा जुन कुराहरूबाट उसले तिमीहरूलाई सावधान गर्छ त्यस कुराको केही अंश (अवश्य) तिमीहरूमाथि आइलाग्नेछ । अल्लाहले कुनै सीमोलङ्घनकारी तथा मिथ्यावादी व्यक्तिलाई कदापि मार्ग देखाउँदैनन् ।

يَا قَوْمِ لَكُمُ الْمُلْكُ الْيَوْمَ ظَاهِرِينَ فِي الْأَرْضِ فَمَن يَنصُرُنَا مِن بَأْسِ اللَّهِ إِن جَاءَنَا ۚ قَالَ فِرْعَوْنُ مَا أُرِيكُمْ إِلَّا مَا أَرَىٰ وَمَا أَهْدِيكُمْ إِلَّا سَبِيلَ الرَّشَادِ ﴿٣٠﴾

३०. "हे मेरा मानिसहरू हो, आज तिमीहरूको शासन रहेको छ, देशमा तिमीहरू नै विजय रहेका छौ । परन्तु यदि अल्लाहको दण्ड हामीमाथि अवतीर्ण भएमा त्यसबाट हामीलाई (कसले बचाउँछ र) कसले हाम्रो सहयोग गर्छ?" फिरौनले भन्यो: "म तिमीहरूको त्यही कुरोतर्फ ध्यानाकृष्ट गर्छु जुनकुरो म राम्रो देख्छु, तथा म तिमीहरूलाई केवल सत्यताको मार्ग देखाउँछु ।"

وَقَالَ الَّذِي آمَنَ يَا قَوْمِ إِنِّي أَخَافُ عَلَيْكُم مِّثْلَ يَوْمِ الْأَحْزَابِ ﴿٣١﴾

३१. तथा त्यस विश्वासी व्यक्तिले भन्यो, "हे मेरा मानिसहरू हो, म तिमीहरूका निम्ति विभिन्न समूहहरूको जस्तो (घातक) समयदेखि डराउँछु ।

مِثْلَ دَأْبِ قَوْمِ نُوحٍ وَعَادٍ وَثَمُودَ وَالَّذِينَ مِن بَعْدِهِمْ ۚ وَمَا اللَّهُ يُرِيدُ ظُلْمًا لِّلْعِبَادِ ﴿٣٢﴾

३२. "नूहका मानिसहरू र आद र समूद तथा तिनीहरूभन्दा पछिका मानिसहरूको घटनासदृश । तथा अल्लाह (आफ्ना) सेवकहरूमाथि अन्याय गर्न चाहँदैनन् ।

وَيَا قَوْمِ إِنِّي أَخَافُ عَلَيْكُمْ يَوْمَ التَّنَادِ ﴿٣٣﴾

३३. "तथा हे मेरा मानिसहरू हो, म तिमीहरूका निम्ति परस्पर एक अर्कालाई (सहयोगका निम्ति) पुकार्ने दिनदेखि डराउँछु,

يَوْمَ تُوَلُّونَ مُدْبِرِينَ مَا لَكُم مِّنَ اللَّهِ مِنْ عَاصِمٍ ۗ وَمَن يُضْلِلِ اللَّهُ

३४. यस्तो दिन, जब तिमीहरू आफ्नो पिठ्यूँ देखाएर भाग्नेछौ । अल्लाहविरुद्ध

فَمَا لَهُ مِنْ هَادٍ ﴿٣٤﴾

तिमीहरूलाई बचाउने कोही हुनेछैन । तथा जसलाई अल्लाहले पथभ्रष्ट घोषित गर्छन् त्यसको कोही मार्गदर्शक हुन सक्दैन ।

وَلَقَدْ جَاءَكُمْ يُوسُفُ مِنْ قَبْلُ بِالْبَيِّنَاتِ فَمَا زِلْتُمْ فِي شَكٍّ مِمَّا جَاءَكُمْ بِهِ ۖ حَتَّىٰ إِذَا هَلَكَ قُلْتُمْ لَنْ يَبْعَثَ اللَّهُ مِنْ بَعْدِهِ رَسُولًا ۚ كَذَٰلِكَ يُضِلُّ اللَّهُ مَنْ هُوَ مُسْرِفٌ مُرْتَابٌ ﴿٣٥﴾

३५. "तथा यसअघि तिमीहरूसमक्ष युसूफ स्पष्ट प्रमाणहरूका साथ आएका थिए, परन्तु उनले ल्याएका कुराहरूप्रति तिमीहरूले सन्देह गर्न छाडेनौ । अतः जब उनको मृत्यु भयो तब तिमीहरूले भन्यौः "उनीपछि अल्लाहले कदापि कुनै सन्देशवाहक पठाउनेछैनन् ।" यसै प्रकार अल्लाह सीमोलङ्घनकारी, (तथा) सन्देह गर्ने व्यक्तिहरूलाई पथभ्रष्ट घोषित गर्ने गर्छन्,

الَّذِينَ يُجَادِلُونَ فِي آيَاتِ اللَّهِ بِغَيْرِ سُلْطَانٍ أَتَاهُمْ ۖ كَبُرَ مَقْتًا عِنْدَ اللَّهِ وَعِنْدَ الَّذِينَ آمَنُوا ۚ كَذَٰلِكَ يَطْبَعُ اللَّهُ عَلَىٰ كُلِّ قَلْبِ مُتَكَبِّرٍ جَبَّارٍ ﴿٣٦﴾

३६. त्यस्ता व्यक्तिहरूलाई जो अल्लाहका निर्देशनहरूका सम्बन्धमा तिनीहरूलाई प्राप्त कुनै दलिलबिना नै तर्क वितर्क गर्छन् । त्यो कार्य अल्लाहको दृष्टिमा र विश्वासीजनका दृष्टिमा अति नै घृणायोग्य रहेको छ । यसै प्रकार अल्लाह हरेक अभिमानी, अहङ्कारी (व्यक्ति) का हृदयमा मोहर लगाउने गर्छन् ।"

وَقَالَ فِرْعَوْنُ يَا هَامَانُ ابْنِ لِي صَرْحًا لَعَلِّي أَبْلُغُ الْأَسْبَابَ ﴿٣٧﴾

३७. तथा फिरौनले भन्योः "ए हामान, मेरा निम्ति एउटा भव्य महल निर्माण गर ताकि म प्रवेशमार्ग प्राप्त गर्न सकुँ,

أَسْبَابَ السَّمَاوَاتِ فَأَطَّلِعَ إِلَىٰ إِلَٰهِ مُوسَىٰ وَإِنِّي لَأَظُنُّهُ كَاذِبًا ۚ وَكَذَٰلِكَ زُيِّنَ لِفِرْعَوْنَ سُوءُ عَمَلِهِ وَصُدَّ عَنِ السَّبِيلِ ۚ وَمَا كَيْدُ فِرْعَوْنَ إِلَّا فِي تَبَابٍ ﴿٣٨﴾

३८. "आकाशमण्डल सम्म पुग्ने साधनस्वरूप, ताकि म मूसाका प्रतिपालकलाई देख्न सकूँ, तथा म तिनलाई निश्चयपूर्वक मिथ्यावादी ठान्छु ।" तथा यस प्रकार फिरौनका दृष्टिमा त्यसका दुष्कर्महरू सुन्दर (तुल्याएर) देखाइएको थियो, तथा उसलाई सन्मार्गबाट विमुख गरिएको थियो, तथा फिरौनको योजना परिणामस्वरूप असफल हुनपुग्यो ।

وَقَالَ الَّذِيٓ اٰمَنَ يٰقَوْمِ اتَّبِعُوْنِ اَهْدِكُمْ سَبِيْلَ الرَّشَادِ ﴿٣٩﴾

३९. तथा त्यो विश्वासी व्यक्तिले भन्यो: "हे मेरा मानिसहरू हो, मेरो अनुसरण गर । म तिमीहरूलाई सन्मार्ग देखाउने छु ।

يٰقَوْمِ اِنَّمَا هٰذِهِ الْحَيٰوةُ الدُّنْيَا مَتَاعٌ ۖ وَّاِنَّ الْاٰخِرَةَ هِيَ دَارُ الْقَرَارِ ﴿٤٠﴾

४०. "हे मेरा मानिसहरू हो, यो सांसारिक जीवन ता केवल एउटा (अस्थायी) जीविकास्वरूप हो, तथा परलोक निश्चयपूर्वक स्थायी बसोबासको स्थान रहेको छ ।"

مَنْ عَمِلَ سَيِّئَةً فَلَا يُجْزٰٓى اِلَّا مِثْلَهَا ۚ وَمَنْ عَمِلَ صَالِحًا مِّنْ ذَكَرٍ اَوْ اُنْثٰى وَهُوَ مُؤْمِنٌ فَاُولٰٓئِكَ يَدْخُلُوْنَ الْجَنَّةَ يُرْزَقُوْنَ فِيْهَا بِغَيْرِ حِسَابٍ ﴿٤١﴾

४१. "जसले अपकर्म गर्छ त्यसलाई त्यहीअनुसार प्रतिफल प्राप्त हुनेछ, परन्तु जसले पुण्यकार्य गर्छ, चाहे त्यो पुरुष होस् अथवा महिला, र त्यो विश्वासी रहेमा– यस्ता व्यक्तिहरू स्वर्गीय बगैंचामा दाखिल हुनेछन्, त्यहाँ तिनीहरूलाई जीविका (उपहार)प्रदान गरिनेछ ।

وَيٰقَوْمِ مَا لِيْٓ اَدْعُوْكُمْ اِلَى النَّجٰوةِ وَتَدْعُوْنَنِيْٓ اِلَى النَّارِ ﴿٤٢﴾

४२. तथा हे मेरा मानिसहरू हो, यो कस्तो (अचम्भको) कुरो, अर्थात्, म तिमीहरूलाई मुक्तितर्फ आह्वान गर्छु, तथा तिमीहरू भने मलाई अग्नितर्फ डाक्छौ ।

تَدْعُوْنَنِيْ لِاَكْفُرَ بِاللّٰهِ وَاُشْرِكَ بِهٖ مَا لَيْسَ لِيْ بِهٖ عِلْمٌ ۖ وَّاَنَا اَدْعُوْكُمْ اِلَى الْعَزِيْزِ الْغَفَّارِ ﴿٤٣﴾

४३. "तिमीहरू मलाई अल्लाहप्रति अविश्वास गर्न र ती वस्तुहरूलाई अल्लाहका भागीदार तुल्याउन निमन्त्रना गर्छौ जसबारे मलाई केही थाहा छैन, अपितु म तिमीहरूलाई सर्वशक्तिमान, परम क्षमाशील (अल्लाह) तर्फ निम्त्याउँछु ।

لَا جَرَمَ اَنَّمَا تَدْعُوْنَنِيْٓ اِلَيْهِ لَيْسَ لَهٗ دَعْوَةٌ فِى الدُّنْيَا وَلَا فِى الْاٰخِرَةِ وَاَنَّ مَرَدَّنَآ اِلَى اللّٰهِ وَاَنَّ الْمُسْرِفِيْنَ هُمْ اَصْحٰبُ النَّارِ ﴿٤٤﴾

४४. निश्चय नै, जुन वस्तुहरूतर्फ तिमीहरू मलाई बोलाउँछौ तिनीहरूलाई सम्बोधन गर्ने (नाम) न यस संसारमा रहेको छ न त परलोकमा नै, तथा हाम्रो प्रत्यावर्तन निश्चयपूर्वक अल्लाहतर्फै हुनेछ तथा सीमोल्लङ्घनकारी-हरूको ठेगाना अग्नि नै हुनेछ ।

فَسَتَذْكُرُونَ مَآ أَقُولُ لَكُمْ ۚ وَأُفَوِّضُ أَمْرِىٓ إِلَى ٱللَّهِ ۚ إِنَّ ٱللَّهَ بَصِيرٌۢ بِٱلْعِبَادِ ﴿٤٤﴾

४५. अत: मैले तिमीहरूलाई भनेका कुराहरू तिमीहरूले अवश्य अतिशीघ्र स्मरण गिर्नेछौ । तथा म आफ्नो मामिला अल्लाहका जुनाफमा सुम्पन्छु । अल्लाहले वस्तुत: (आफ्ना सम्पूर्ण) सेवकहरूलाई देखिरहेछन् ।"

فَوَقَىٰهُ ٱللَّهُ سَيِّـَٔاتِ مَا مَكَرُوا۟ ۖ وَحَاقَ بِـَٔالِ فِرْعَوْنَ سُوٓءُ ٱلْعَذَابِ ﴿٤٥﴾

४६. फलस्वरूप अल्लाहले त्यसलाई तिनीहरूको षडयन्त्रको दुष्परिणामबाट बचाए, तथा फिरौनका मानिसहरूलाई चारैतर्फबाट पीडादायक दण्डले घेऱ्यो–

ٱلنَّارُ يُعْرَضُونَ عَلَيْهَا غُدُوًّا وَعَشِيًّا ۖ وَيَوْمَ تَقُومُ ٱلسَّاعَةُ أَدْخِلُوٓا۟ ءَالَ فِرْعَوْنَ أَشَدَّ ٱلْعَذَابِ ﴿٤٦﴾

४७. अग्निले, जसका सामुन्ने बिहानी र बेलुकी तिनीहरूलाई पेस गरिन्छ । तथा निर्धारित घडी उपस्थित हुने दिन (के भनिनेछ भने): "फिरौनका मानिसहरूलाई कठोर दण्डमा दाखिल गर ।"

وَإِذْ يَتَحَآجُّونَ فِى ٱلنَّارِ فَيَقُولُ ٱلضُّعَفَـٰٓؤُا۟ لِلَّذِينَ ٱسْتَكْبَرُوٓا۟ إِنَّا كُنَّا لَكُمْ تَبَعًا فَهَلْ أَنتُم مُّغْنُونَ عَنَّا نَصِيبًا مِّنَ ٱلنَّارِ ﴿٤٧﴾

४८. तथा जब तिनीहरू अग्निकुण्डमा परस्पर विवाद गर्नेछन् तब दुर्बलहरूले ठूला-बडाहरूलाई भन्नेछन्, "वस्तुत: हामी तिमीहरूका अनुयायी थियौं, अत: के तिमीहरू आज हामीलाई अग्निको कुनै अंशबाट बचाउन सक्नेछौ?"

قَالَ ٱلَّذِينَ ٱسْتَكْبَرُوٓا۟ إِنَّا كُلٌّ فِيهَآ إِنَّ ٱللَّهَ قَدْ حَكَمَ بَيْنَ ٱلْعِبَادِ ﴿٤٨﴾

४९. ती अभिमानी व्यक्तिहरूले भन्नेछन् : "हामी सबैजना यसभित्रै छौं । अल्लाहले (आफ्ना) सेवकहरूका बीचमा निर्णय गरिसकेका छन् ।"

وَقَالَ ٱلَّذِينَ فِى ٱلنَّارِ لِخَزَنَةِ جَهَنَّمَ ٱدْعُوا۟ رَبَّكُمْ يُخَفِّفْ عَنَّا يَوْمًا مِّنَ ٱلْعَذَابِ ﴿٤٩﴾

५०. तथा ती अग्निमा रहेका व्यक्तिहरूले नर्कका पालेहरूसित भन्नेछन्, "आफ्ना प्रतिपालकलाई पुकार, ताकि उनले हाम्रा निम्ति (मात्र) एक दिनको दण्ड हलुका गरिदिउँन् ।"

قَالُوٓا۟ أَوَلَمْ تَكُ تَأْتِيكُمْ رُسُلُكُم بِٱلْبَيِّنَـٰتِ ۖ قَالُوا۟ بَلَىٰ ۚ قَالُوا۟ فَٱدْعُوا۟ ۗ وَمَا دُعَـٰٓؤُا۟ ٱلْكَـٰفِرِينَ إِلَّا فِى ضَلَـٰلٍ ﴿٥٠﴾

५१. तिनीहरूले भन्नेछन्, "के तिमीहरूसमक्ष तिमीहरूका सन्देशवाहक-हरू स्पष्ट चिह्नहरू लिएर आएका थिएनन्

र?" ती अग्निवासी व्यक्तिहरूले उत्तर दिनेछन्, "हो (आएकाथिए) ।" (तब पालेहरूले) भन्नेछन्, "त्यसो भए पुकार्दै जाऊ ।" परन्तु अविश्वासीहरूको प्रार्थनाले केही फाइदा दिनेछैन ।

إِنَّا لَنَنصُرُ رُسُلَنَا وَالَّذِينَ آمَنُوا فِي الْحَيَاةِ الدُّنْيَا وَيَوْمَ يَقُومُ الْأَشْهَادُ ﴿٥١﴾

५२. हामी निश्चयपूर्वक हाम्रा सन्देशवाहकहरू तथा विश्वासीजन सबैलाई यस संसारमा र साक्षीहरू खडा हुने दिन सहयोग गर्नेछौं,

يَوْمَ لَا يَنفَعُ الظَّالِمِينَ مَعْذِرَتُهُمْ وَلَهُمُ اللَّعْنَةُ وَلَهُمْ سُوءُ الدَّارِ ﴿٥٢﴾

५३. त्यस दिन जब अत्याचारीहरूलाई तिनीहरूका कुनै बहानाले फाइदा दिनेछैन, तिनीहरू अभिशापित हुनेछन् र तिनीहरूलाई निकृष्ट निवासगृह मिल्नेछ ।

وَلَقَدْ آتَيْنَا مُوسَى الْهُدَىٰ وَأَوْرَثْنَا بَنِي إِسْرَائِيلَ الْكِتَابَ ﴿٥٣﴾

५४. त्था मूसालाई हामीले निश्चयपूर्वक मार्गदर्शन प्रदान गरेका थियौं, तथा इजरायलका सन्तानलाई हामीले पुस्तकका वारिस बनाएका थियौं–

هُدًى وَذِكْرَىٰ لِأُولِي الْأَلْبَابِ ﴿٥٤﴾

५५. जुन पुस्तक बुद्धिमान व्यक्तिहरूका निम्ति मार्गदर्शन तथा उपदेशस्वरूप थियो

فَاصْبِرْ إِنَّ وَعْدَ اللَّهِ حَقٌّ وَاسْتَغْفِرْ لِذَنبِكَ وَسَبِّحْ بِحَمْدِ رَبِّكَ بِالْعَشِيِّ وَالْإِبْكَارِ ﴿٥٥﴾

५६. अतः धैर्यधारण गर । अल्लाहको वचन नितान्त सत्य रहेको छ । तथा आफ्नो' दुर्बलता निवारणका निम्ति क्षमायाचना गर, र बेलुकी तथा बिहानीपख आफ्ना प्रतिपालकको प्रशंसाका साथ पवित्रता वर्णन गर्ने गर ।

إِنَّ الَّذِينَ يُجَادِلُونَ فِي آيَاتِ اللَّهِ بِغَيْرِ سُلْطَانٍ أَتَاهُمْ إِن فِي صُدُورِهِمْ إِلَّا كِبْرٌ مَّا هُم بِبَالِغِيهِ فَاسْتَعِذْ بِاللَّهِ إِنَّهُ هُوَ السَّمِيعُ الْبَصِيرُ ﴿٥٦﴾

५७. जुन व्यक्तिहरू कुनै आधिकारिक ज्ञान प्राप्त नै नगरी अल्लाहका चिह्नहरूका सम्बन्धमा तर्क वितर्क गर्छन्– तिनीहरूका मनमा केवल एक प्रकारको बडप्पनको अभिमान (घमण्ड) हुन्छ जसलाई तिनीहरूले कहिल्यै प्राप्त गर्न सक्दैनन् । अतः अल्लाहको शरण याचना गर । निश्चय नै उनी सर्वश्रोता, सर्वद्रष्टा

छन् ।

لَخَلْقُ السَّمٰوٰتِ وَالْاَرْضِ اَكْبَرُ مِنْ خَلْقِ النَّاسِ وَلٰكِنَّ اَكْثَرَ النَّاسِ لَا يَعْلَمُوْنَ ۝٥٨

५८. निश्चयपूर्वक, आकाशमण्डल र पृथ्वीको सिर्जना मानवजातिको सिर्जना गर्ने कार्य भन्दा विशाल (महान) रहेको छ, परन्तु अधिकतर मानिसहरू बुझ्दैनन् ।

وَمَا يَسْتَوِى الْاَعْمٰى وَالْبَصِيْرُ ۙ وَالَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ وَلَا الْمُسِىْٓءُ ۗ قَلِيْلًا مَّا تَتَذَكَّرُوْنَ ۝٥٩

५९. तथा अन्धाहरू र नेत्रवानहरू एकसमान हुन सक्दैनन्, न त ती विश्वास गर्ने र पुण्य कार्य गर्ने व्यक्तिहरू अपकर्म गर्ने व्यक्तिहरू (का समान) हुन सक्छन् । तिमीहरू अति कमै उपदेश ग्रहण गर्ने गर्छौ

اِنَّ السَّاعَةَ لَاٰتِيَةٌ لَّا رَيْبَ فِيْهَا وَلٰكِنَّ اَكْثَرَ النَّاسِ لَا يُؤْمِنُوْنَ ۝٦٠

६०. निर्धारित घडी अवश्य उपस्थित हुनेछ, यस (कुरा)मा केही सन्देह छैन, तथापि अधिकांश मानिसहरू विश्वास गर्दैनन् ।

وَقَالَ رَبُّكُمُ ادْعُوْنِىْٓ اَسْتَجِبْ لَكُمْ ۗ اِنَّ الَّذِيْنَ يَسْتَكْبِرُوْنَ عَنْ عِبَادَتِىْ سَيَدْخُلُوْنَ جَهَنَّمَ دٰخِرِيْنَ ۝٦١ ع

६१. तथा तिमीहरूका प्रतिपालक भन्छन्, "मलाई पुकार, म अवश्य तिमीहरूको (प्रार्थनाको) उत्तर दिन्छु । परन्तु जुन व्यक्तिहरू अहङ्कारका कारण मेरो उपासना गर्न सक्दैनन् तिनीहरू अवश्य अपमानित भइ नर्कमा प्रवेश गर्नेछन् ।"

اَللّٰهُ الَّذِىْ جَعَلَ لَكُمُ الَّيْلَ لِتَسْكُنُوْا فِيْهِ وَالنَّهَارَ مُبْصِرًا ۗ اِنَّ اللّٰهَ لَذُوْ فَضْلٍ عَلَى النَّاسِ وَلٰكِنَّ اَكْثَرَ النَّاسِ لَا يَشْكُرُوْنَ ۝٦٢

६२. ती अल्लाह नै हुन् जसले तिमीहरूका निम्ति रात्रि बनाए ताकि त्यसमा तिमीहरू विश्राम गर, तथा (तिमीहरूलाई) देख्न (योग्य बनाउन) उनले दिन बनाए । वस्तुत: अल्लाह मानवजातिका निम्ति कृपासागर रहेका छन्, तथापि अधिकांश मानिसहरू कृतध्न छन् ।

ذٰلِكُمُ اللّٰهُ رَبُّكُمْ خَالِقُ كُلِّ شَىْءٍ ۘ لَآ اِلٰهَ اِلَّا هُوَ ۖ فَاَنّٰى تُؤْفَكُوْنَ ۝٦٣

६३. सम्पूर्ण वस्तुहरूका स्रष्टा, तिमीहरूका प्रतिपालक, अल्लाह त्यस्ता छन् । उनीबाहेक अन्य कोही उपास्य छैन । अत: तिमीहरूलाई कुन दिशामा फर्काएर

लगिदैछ त?

६४. यसै प्रकार जसले अल्लाहका चिह्नहरूको अस्वीकार गर्छन् तिनीहरूलाई (सन्मार्गबाट) विमुख तुल्याइन्छ ।

كَذٰلِكَ يُؤْفَكُ الَّذِيْنَ كَانُوْا بِاٰيٰتِ اللّٰهِ يَجْحَدُوْنَ ﴿٦٣﴾

६५. अल्लाह उनै हुन् जसले तिमीहरूका निम्ति पृथ्वीलाई विश्रामस्थलस्वरूप बनाएका छन्, तथा आकाशलाई सुरक्षाको साधन (छानो)स्वरूप, तथा तिमीहरूलाई विभिन्न आकार प्रदान गरेका छन् र तिमीहरूको बनावटलाई उत्कृष्ट तुल्याएका छन् । तथा स्वास्थ्यकर वस्तुहरूद्वारा तिमीहरूलाई जीविका प्रदान गरेका छन् । उनै अल्लाह तिमीहरूका प्रतिपालक हुन् । अतः विश्व ब्रह्माण्डका स्वामी अल्लाह अति नै मङ्गलमय छन् ।

اَللّٰهُ الَّذِيْ جَعَلَ لَكُمُ الْاَرْضَ قَرَارًا وَّالسَّمَآءَ بِنَآءً وَّ صَوَّرَكُمْ فَاَحْسَنَ صُوَرَكُمْ وَ رَزَقَكُمْ مِّنَ الطَّيِّبٰتِ ؕ ذٰلِكُمُ اللّٰهُ رَبُّكُمْ ۚۖ فَتَبٰرَكَ اللّٰهُ رَبُّ الْعٰلَمِيْنَ ﴿٦٥﴾

६६. उनी नै जीवित (उपास्य) हुन्, उनीबाहेक अन्य कोही उपास्य छैन । अतः उनकै धर्मनिष्ठ बनी उनलाई पुकार । सम्पूर्ण प्रशंसाका अल्लाह नै एकमात्र अधिकारी रहेका छन् उनी नै विश्व ब्रह्माण्डका स्वामी हुन् ।

هُوَ الْحَيُّ لَاۤ اِلٰهَ اِلَّا هُوَ فَادْعُوْهُ مُخْلِصِيْنَ لَهُ الدِّيْنَ ؕ اَلْحَمْدُ لِلّٰهِ رَبِّ الْعٰلَمِيْنَ ﴿٦٦﴾

६७. तिमी भन, "अल्लाहलाई छाडी तिमीहरू जसलाई पुकार्छौ मलाई तिनीहरूको उपासना गर्नबाट मनाही गरिएको छ, विशेषगरी मेरा प्रतिपालकका तर्फबाट मप्रति स्पष्ट प्रमाणहरूको आगमनपश्चात्, तथा मलाई विश्व-ब्रह्माण्डका स्वामीको आज्ञाकारी बन्ने आदेश भएको छ ।"

قُلْ اِنِّيْ نُهِيْتُ اَنْ اَعْبُدَ الَّذِيْنَ تَدْعُوْنَ مِنْ دُوْنِ اللّٰهِ لَمَّا جَآءَنِيَ الْبَيِّنٰتُ مِنْ رَّبِّيْ ؗ وَاُمِرْتُ اَنْ اُسْلِمَ لِرَبِّ الْعٰلَمِيْنَ ﴿٦٦﴾

६८. ती उनी नै हुन्, जसले तिमीहरूलाई (आदिमा) माटोबाट सिर्जना गरे, त्यसपछि वीर्यको थोपाबाट, पुनः एउटा खुनको ढिकाबाट, त्यसपछि उनले तिमीहरूलाई एउटा बालकस्वरूप बाहिर निकाल्छन्,

هُوَ الَّذِيْ خَلَقَكُمْ مِّنْ تُرَابٍ ثُمَّ مِنْ نُّطْفَةٍ ثُمَّ مِنْ عَلَقَةٍ ثُمَّ يُخْرِجُكُمْ طِفْلًا ثُمَّ لِتَبْلُغُوْۤا اَشُدَّكُمْ ثُمَّ لِتَكُوْنُوْا شُيُوْخًا ۚ وَمِنْكُمْ مَّنْ يُّتَوَفّٰى

مِنْ قَبْلُ وَ لِتَبْلُغُوْٓا اَجَلًا مُّسَمًّى وَّ لَعَلَّكُمْ تَعْقِلُوْنَ ﴿٦٧﴾

त्यसपछि (उनले तिमीहरूलाई बढ्न दिन्छन्) ताकि तिमीहरू आफ्नो पूर्ण दृढता प्राप्त गर, त्यसपछि तिमीहरूलाई (उनले) वृद्ध हुन (दिन्छन्)– यद्यपि तिमीहरूमध्ये केही चाहिँ त्यसअघि नै मृत्यु प्राप्त गर्छौं– तथा (उनले तिमीहरूलाई जीवित रहन दिन्छन्) ताकि तिमीहरू एउटा निर्धारित म्यादसम्म पुग्न सक, तथा तिमीहरू ज्ञान प्राप्त गर्न सक ।

هُوَ الَّذِيْ يُحْيٖ وَ يُمِيْتُ ۚ فَاِذَا قَضٰٓى اَمْرًا فَاِنَّمَا يَقُوْلُ لَهٗ كُنْ فَيَكُوْنُ ﴿٦٨﴾

६९. ती उनी नै हुन जसले जीवन दिन्छन् तथा मृत्यु प्रदान गर्छन् । तथा जब उनले कुनै कुराको निर्णय गर्छन्, उनले त्यसलाई केवल 'भएस' भनी आदेश दिन्छन्, तथा त्यो हुन पुग्छ ।

اَلَمْ تَرَ اِلَى الَّذِيْنَ يُجَادِلُوْنَ فِيْٓ اٰيٰتِ اللّٰهِ ۚ اَنّٰى يُصْرَفُوْنَ ﴿٦٩﴾

७०. जुन व्यक्तिहरू अल्लाहका निर्देशनहरूका सम्बन्धमा तर्क वितर्क गर्छन् के तिमीले तिनीहरूलाई देखेका छैनौ र? तिनीहरूलाई (सत्यबाट) विमुख गरी कता लगिँदैछ !

الَّذِيْنَ كَذَّبُوْا بِالْكِتٰبِ وَ بِمَآ اَرْسَلْنَا بِهٖ رُسُلَنَا ۚ فَسَوْفَ يَعْلَمُوْنَ ﴿٧٠﴾

७१. ती व्यक्तिहरू नै हुन जसले पुस्तक तथा ती कुराहरूलाई अस्वीकार गरे जसका साथ हामीले आफ्ना सन्देशवाहकहरूलाई पठाएका थियौं । परन्तु शीघ्र नै तिनीहरूले थाहा पाउनेछन्,

اِذِ الْاَغْلٰلُ فِيْٓ اَعْنَاقِهِمْ وَ السَّلٰسِلُ ۚ يُسْحَبُوْنَ ﴿٧١﴾

७२. जब तिनीहरूका गर्धनमा लौहकण्डी र साङलीहरू (पनि) वेरिनेछ । तिनीहरूलाई तानिनेछ–

فِي الْحَمِيْمِ ۙ ثُمَّ فِي النَّارِ يُسْجَرُوْنَ ﴿٧٢﴾

७३. उम्लँदो पानीभित्र, त्यसपछि अग्निमा तिनीहरूलाई जलाइनेछ ।

ثُمَّ قِيْلَ لَهُمْ اَيْنَ مَا كُنْتُمْ تُشْرِكُوْنَ ﴿٧٣﴾

७४. त्यसपछि तिनीहरूलाई के भनिनेछ भने, "तिनीहरू कहाँ छन् जसलाई तिमीहरूले (अल्लाहका) भागीदार

तुल्याएका थियौ?

مِنْ دُوْنِ اللّٰهِ ؕ قَالُوْا ضَلُّوْا عَنَّا بَلْ لَّمْ نَكُنْ نَّدْعُوْا مِنْ قَبْلُ شَيْـًٔا ؕ كَذٰلِكَ يُضِلُّ اللّٰهُ الْكٰفِرِيْنَ ۝٧٤

७५. "अल्लाहलाई छाडी?" तिनीहरूले भन्नेछन्, "तिनीहरू हामीबाट अदृश्य हुन पुगेका छन् । होइन, (अपितु) यसअघि हामीले कसैलाई कहिल्यै पुकारेका थिएनौं ।" यसै प्रकार अल्लाहले अविश्वासीहरूलाई हतबुद्धि तुल्याउनेछन् ।

ذٰلِكُمْ بِمَا كُنْتُمْ تَفْرَحُوْنَ فِى الْاَرْضِ بِغَيْرِ الْحَقِّ وَبِمَا كُنْتُمْ تَمْرَحُوْنَ ۝٧٥

७६. त्यही हुनेछ, किनभने तिमीहरू बिना औचित्य पृथ्वीमा खुसियाली मनाउने गर्थ्यौ, तथा तिमीहरू सेखीपूर्ण व्यवहार गर्ने गर्थ्यौ

اُدْخُلُوْٓا اَبْوَابَ جَهَنَّمَ خٰلِدِيْنَ فِيْهَا ۚ فَبِئْسَ مَثْوَى الْمُتَكَبِّرِيْنَ ۝٧٦

७७. "तिमीहरू नर्कका ढोकाहरूमा त्यहाँ सदा रहनका निम्ति प्रवेश गर । तथा अहङ्कारीहरूको ठेगाना अति नै निकृष्ट रहेको छ ।"

فَاصْبِرْ اِنَّ وَعْدَ اللّٰهِ حَقٌّ ۚ فَاِمَّا نُرِيَنَّكَ بَعْضَ الَّذِيْ نَعِدُهُمْ اَوْ نَتَوَفَّيَنَّكَ فَاِلَيْنَا يُرْجَعُوْنَ ۝٧٧

७८. अतः धैर्यधारण गर । अल्लाहको वचन निश्चयपूर्वक सत्य रहेको छ । तथा चाहे तिनीहरूलाई हामीले दिएको वचनको केही अंश तिमीलाई हामी देखाऔं अथवा चाहे (हाम्रो वचन पूरा हुनुअघि नै) हामी तिमीलाई मृत्यु प्रदान गरौं, (कुनै हालतमा पनि) आखिर तिनीहरूलाई हामीतर्फै फर्काएर ल्याइनेछ ।

وَلَقَدْ اَرْسَلْنَا رُسُلًا مِّنْ قَبْلِكَ مِنْهُمْ مَّنْ قَصَصْنَا عَلَيْكَ وَمِنْهُمْ مَّنْ لَّمْ نَقْصُصْ عَلَيْكَ ؕ وَمَا كَانَ لِرَسُوْلٍ اَنْ يَّاْتِيَ بِاٰيَةٍ اِلَّا بِاِذْنِ اللّٰهِ ۚ فَاِذَا جَآءَ اَمْرُ اللّٰهِ قُضِيَ بِالْحَقِّ وَخَسِرَ هُنَالِكَ الْمُبْطِلُوْنَ ۝٧٨

७९. तथा तिमीभन्दा पहिला हामीले सन्देशवाहककहरू पठाएका थियौं, तिनीहरूमध्ये केही यस्ता छन् जसको हामीले तिमीसित उल्लेख गरेका छौं, तथा तिनीहरूमध्ये केही यस्ता पनि छन् जसको उल्लेख हामीले तिमीसित गरेका छैनौं, तथा कुनै सन्देशवाहकका निम्ति अल्लाहको आदेशबिना कुनै चिह्न प्रस्तुत गर्न सम्भव छैन । परन्तु जब अल्लाहको आदेश आउँछ, सत्यको आधारमा मामिलाको निर्णय हुन्छ, तब मिथ्या कुरा गर्ने व्यक्तिहरू घाटाग्रस्त

हुन पुग्छन् ।

اَللّٰهُ الَّذِيْ جَعَلَ لَكُمُ الْاَنْعَامَ لِتَرْكَبُوْا مِنْهَا وَمِنْهَا تَاْكُلُوْنَ ۝

८०. ती अल्लाह नै हुन् जसले तिमीहरूका निम्ति चौपायाको सृष्टि गरेका छन्, ताकि तिनीहरूमध्ये केहीमाथि तिमीहरू सवारी गर, तथा तिनीहरूमध्ये केहीलाई खाद्यको रूपमा प्रयोग गर–

وَلَكُمْ فِيْهَا مَنَافِعُ وَلِتَبْلُغُوْا عَلَيْهَا حَاجَةً فِيْ صُدُوْرِكُمْ وَعَلَيْهَا وَعَلَى الْفُلْكِ تُحْمَلُوْنَ ۝

८१. तथा तिनीहरूमा तिमीहरूका निम्ति (अन्यान्य फाइदाहरू पनि छन्– अत: तिनीहरूद्वारा तिमीहरू आफ्ना मनमा रहेको आङ्काक्षालाई पूर्ण गर । तथा तिनीहरूमाथि र (समुद्री) जहाजहरूमाथि तिमीहरूलाई सवार गरिन्छ ।

وَيُرِيْكُمْ اٰيٰتِهٖ ۖ فَاَيَّ اٰيٰتِ اللّٰهِ تُنْكِرُوْنَ ۝

८२. तथा उनी तिमीहरूलाई आफ्ना चिह्नहरू देखाउँछन् । अत: अल्लाहका चिह्नहरूमध्ये कुनचाहिँ चिह्नको तिमीहरू अस्वीकार गर्छौ त?

اَفَلَمْ يَسِيْرُوْا فِي الْاَرْضِ فَيَنْظُرُوْا كَيْفَ كَانَ عَاقِبَةُ الَّذِيْنَ مِنْ قَبْلِهِمْ ۗ كَانُوْٓا اَكْثَرَ مِنْهُمْ وَاَشَدَّ قُوَّةً وَّاٰثَارًا فِي الْاَرْضِ فَمَآ اَغْنٰى عَنْهُمْ مَّا كَانُوْا يَكْسِبُوْنَ ۝

८३. के तिनीहरूले पृथ्वीमा परिभ्रमण गरेका छैनन् ताकि तिनीहरूभन्दा पहिलाका मानिसहरूको अन्त कस्तो भएको थियो भन्ने कुरा तिनीहरूले देख्न सकून्? तिनीहरू यिनीहरूभन्दा सङ्ख्यामा अधिक थिए, तथा अधिक शक्तिशाली र पृथ्वीमा (आफूले छाडेका) छापहरूको आधारमा पनि (अधिक शक्तिशाली थिए) ।

فَلَمَّا جَآءَتْهُمْ رُسُلُهُمْ بِالْبَيِّنٰتِ فَرِحُوْا بِمَا عِنْدَهُمْ مِّنَ الْعِلْمِ وَحَاقَ بِهِمْ مَّا كَانُوْا بِهٖ يَسْتَهْزِءُوْنَ ۝

८४. तथा जब तिनीहरूसमक्ष तिनीहरूका सन्देशवाहकहरू स्पष्ट चिह्नहरू लिएर आएका थिए, तिनीहरूले आफूलाई प्राप्त ज्ञानप्रति अहङ्कार गरे । फलस्वरूप जसका बारेमा तिनीहरू ठट्टा गर्थे त्यसैले तिनीहरूलाई समात्यो ।

فَلَمَّا رَاَوْا بَاْسَنَا قَالُوْٓا اٰمَنَّا بِاللّٰهِ وَحْدَهٗ وَكَفَرْنَا بِمَا كُنَّا بِهٖ مُشْرِكِيْنَ ۝

८५. तथा जब तिनीहरूले हाम्रो दण्ड देखे, तिनीहरू भन्न लागे, "हामी केवल अल्लाहप्रति विश्वास गर्छौं तथा जस

जसलाई हामीले उनका भागीदार तुल्याउने गरेका थियौं ती सबैलाई अस्वीकार गर्छौं ।"

فَلَمْ يَكُ يَنْفَعُهُمْ إِيمَانُهُمْ لَمَّا رَأَوْا بَأْسَنَا ۖ سُنَّتَ اللَّهِ الَّتِي قَدْ خَلَتْ فِي عِبَادِهِ ۖ وَخَسِرَ هُنَالِكَ الْكَافِرُونَ ﴿٨٥﴾

८६. परन्तु जब तिनीहरूले हाम्रो दण्ड देखे (त्यस अवस्थामा) तिनीहरूको विश्वासले तिनीहरूलाई कुनै लाभ पुऱ्याएन । यही नै अल्लाहको विधान हो जुन उनका सेवकहरूका सम्बन्धमा (निरन्तर) जारी रहँदै आएको छ । तथा अविश्वासीहरू यसै प्रकार विनाश हुनपुगे ।




## हा मीम् सज्दा:
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ﴿١﴾

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

حٰمٓ ﴿٢﴾

२. हा मीम्* ।

تَنْزِيْلٌ مِّنَ الرَّحْمٰنِ الرَّحِيْمِ ﴿٣﴾

३. यो (कुरान) परम कृपालु, परम करुणामय अल्लाहका तर्फबाट अवतीर्ण भएको हो ।

كِتٰبٌ فُصِّلَتْ اٰيٰتُهٗ قُرْاٰنًا عَرَبِيًّا لِّقَوْمٍ يَّعْلَمُوْنَ ﴿٤﴾

४. यो एउटा यस्तो (ग्रन्थ) हो जसका आयातहरू विस्तृतरूपमा वर्णन गरिएका छन्– बारम्बार पाठ गरिने, स्पष्ट उत्तम भाषा सम्पन्न– ज्ञानवान व्यक्तिहरूका निम्ति,

بَشِيْرًا وَّ نَذِيْرًا ۚ فَاَعْرَضَ اَكْثَرُهُمْ فَهُمْ لَا يَسْمَعُوْنَ ﴿٥﴾

५. शुभसन्देशवाहक तथा सतर्ककारी स्वरूप रहेको छ । परन्तु तिनीहरूमध्ये अधिकतर व्यक्तिहरू विमुख भए तथा तिनीहरू सुन्दैनन् ।

وَ قَالُوْا قُلُوْبُنَا فِيْٓ اَكِنَّةٍ مِّمَّا تَدْعُوْنَآ اِلَيْهِ وَفِيْٓ اٰذَانِنَا وَقْرٌ وَّ مِنْۢ بَيْنِنَا وَ بَيْنِكَ حِجَابٌ فَاعْمَلْ اِنَّنَا عٰمِلُوْنَ ﴿٥﴾

६. तथा तिनीहरू भन्छन्, "हाम्रो हृदय आवृत्त छ (तथा) जुन कुरातर्फ तिमीहरू हामीलाई बोलाउँछौ त्यसबाट (बञ्चित राखिएको छ) तथा हाम्रो कानमा बहिरोपन छ, तथा हामीहरू र तिम्रा बीचमा एउटा पर्दा छ । अत: तिमी आफ्नो कार्य गर, हामी (पनि) कार्यरत छौं ।"

قُلْ اِنَّمَآ اَنَا بَشَرٌ مِّثْلُكُمْ يُوْحٰٓى اِلَيَّ اَنَّمَآ اِلٰهُكُمْ اِلٰهٌ وَّاحِدٌ فَاسْتَقِيْمُوْٓا اِلَيْهِ وَ اسْتَغْفِرُوْهُ ۗ وَ وَيْلٌ لِّلْمُشْرِكِيْنَ ﴿٦﴾

७. तिमी भन,"म पनि तिमीहरूजस्तै केवल एउटा मानिस हुँ । तिमीहरूका उपास्य केवल एकमात्र उपास्य हुन भनी मप्रति आकाशवाणी भएको छ, अत:

---

* परम प्रशंसनीय, महिमामय (अल्लाह) ।

विचलित नभई) तिमीहरू सिधा उनीतर्फै अघि बढ, तथा उनीसितै क्षमायाचना गर ।" तथा ती मूर्तिपूजकहरूको बरबादी होस्,

الَّذِيْنَ لَا يُؤْتُوْنَ الزَّكٰوةَ وَهُمْ بِالْاٰخِرَةِ هُمْ كٰفِرُوْنَ ۝٨

८. जसले जगात दिंदैनन्, तथा ती तिनीहरू नै हुन् जसले परलोकको अस्वीकार गर्छन् ।

اِنَّ الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ لَهُمْ اَجْرٌ غَيْرُ مَمْنُوْنٍ ۝٩

९. जसले विश्वास गर्छन् र पुण्यकार्य गर्छन्, तिनीहरूलाई भने अवश्य कहिल्यै नसकिने प्रतिदान प्राप्त हुनेछ ।

قُلْ اَئِنَّكُمْ لَتَكْفُرُوْنَ بِالَّذِيْ خَلَقَ الْاَرْضَ فِيْ يَوْمَيْنِ وَتَجْعَلُوْنَ لَهٗٓ اَنْدَادًا ؕ ذٰلِكَ رَبُّ الْعٰلَمِيْنَ ۝١٠

१०. तिमी भन,"के तिमीहरू साँचै नै उनीप्रति अविश्वास गर्छौ जसले दुई अवधिमा पृथ्वीलाई सिर्जना गरे? तथा के तिमीहरू उनका भागीदार तुल्याउँछौ?" उनी नै विश्वब्रह्माण्डका प्रतिपालक हुन् ।

وَجَعَلَ فِيْهَا رَوَاسِيَ مِنْ فَوْقِهَا وَبٰرَكَ فِيْهَا وَقَدَّرَ فِيْهَآ اَقْوَاتَهَا فِيْٓ اَرْبَعَةِ اَيَّامٍ ؕ سَوَآءً لِّلسَّآئِلِيْنَ ۝١١

११. उनले त्यसमा (त्यसको सतहमाथि) उच्च रहने दृढ पर्वतहरू बनाए, तथा त्यसलाई वरदानपूर्ण तुल्याए, तथा अन्तमा चार अवधिमा जीविकाका साधनहरूलाई आवश्यक मात्रामा सुव्यवस्थित तुल्याए, सबै खोज गर्नेहरूका निम्ति यो एकसमान रहेको छ ।

ثُمَّ اسْتَوٰٓى اِلَى السَّمَآءِ وَهِيَ دُخَانٌ فَقَالَ لَهَا وَلِلْاَرْضِ ائْتِيَا طَوْعًا اَوْ كَرْهًا ؕ قَالَتَآ اَتَيْنَا طَآئِعِيْنَ ۝١٢

१२. त्यसपछि उनी आकाशतर्फ फर्के तथा त्यो धुवाँसदृश (कुनै वस्तु) थियो, तथा उनले त्यसलाई र पृथ्वीलाई भने, "तिमीहरू दुबै इच्छापूर्वक अथवा अनिच्छापूर्वक आऊ ।" तिनीहरूले भने, "हामी इच्छापूर्वक आयौं ।"

فَقَضٰىهُنَّ سَبْعَ سَمٰوٰتٍ فِيْ يَوْمَيْنِ وَاَوْحٰى فِيْ كُلِّ سَمَآءٍ اَمْرَهَا ؕ وَزَيَّنَّا السَّمَآءَ الدُّنْيَا بِمَصَابِيْحَ ۖ وَحِفْظًا ؕ ذٰلِكَ تَقْدِيْرُ الْعَزِيْزِ الْعَلِيْمِ ۝١٣

१३. अत: उनले तिनीहरूलाई दुई दिनमा सातवटा आकाशमण्डलस्वरूप पूर्णता प्रदान गरे, तथा उनले प्रत्येक आकाशलाई त्यसका विधान आकाशवाणी गरे तथा हामीले तल्लो आकाशलाई (प्रकाशका निम्ति तथा) सुरक्षाका निम्ति दीपहरूद्वारा सुसज्जित तुल्यायौं । यही नै सर्वशक्तिमान,

सर्वज्ञ अल्लाहको निर्णय (विधान) हो ।

فَإِنْ أَعْرَضُوا فَقُلْ أَنذَرْتُكُمْ صَاعِقَةً مِّثْلَ صَاعِقَةِ عَادٍ وَثَمُودَ ﴿١٣﴾

१४. परन्तु यदि तिनीहरू विमुख भएमा, तिमी भन, " जुन दण्डले आद र समूद जातिलाई (घेरेको) थियो म तिमीहरूलाई त्यस्तै विनाशकारी दण्डबाट सावधान गर्छु ।"

إِذْ جَاءَتْهُمُ الرُّسُلُ مِن بَيْنِ أَيْدِيهِمْ وَمِنْ خَلْفِهِمْ أَلَّا تَعْبُدُوا إِلَّا اللَّهَ ۖ قَالُوا لَوْ شَاءَ رَبُّنَا لَأَنزَلَ مَلَائِكَةً فَإِنَّا بِمَا أُرْسِلْتُم بِهِ كَافِرُونَ ﴿١٤﴾

१५. जब तिनीहरूका अघिल्तिर र तिनीहरूका पछिल्तिरबाट तिनीहरूका सन्देशवाहकहरू (के भन्दै) आए (भने), "केवल अल्लाहको उपासना गर," तिनीहरूले भने, "यदि हाम्रा प्रतिपालकले (त्यही) चाहेका भए, उनले अवश्य देवदूतहरूलाई अवतीर्ण गर्ने थिए । अत: जुन कुराका साथ तिमीहरूलाई पठाइएको छ हामी त्यसप्रति अविश्वास गर्छौं ।"

فَأَمَّا عَادٌ فَاسْتَكْبَرُوا فِي الْأَرْضِ بِغَيْرِ الْحَقِّ وَقَالُوا مَنْ أَشَدُّ مِنَّا قُوَّةً ۖ أَوَلَمْ يَرَوْا أَنَّ اللَّهَ الَّذِي خَلَقَهُمْ هُوَ أَشَدُّ مِنْهُمْ قُوَّةً ۖ وَكَانُوا بِآيَاتِنَا يَجْحَدُونَ ﴿١٥﴾

१६. तथा आद जातिले पृथ्वीमा विना औचित्य अहङ्कारपूर्ण व्यवहार गरे तथा तिनीहरूले भने, "हामीभन्दा अधिक शक्तिशाली को छ र? तिनीहरूका सृष्टिकर्ता अल्लाह तिनीहरूभन्दा अधिक शक्तिशाली छन् भन्ने कुरा तिनीहरूले देखेका छैनन् र? तथापि तिनीहरू निरन्तर हाम्रा निर्देशनहरूलाई अस्वीकार गर्ने गर्थे ।

فَأَرْسَلْنَا عَلَيْهِمْ رِيحًا صَرْصَرًا فِي أَيَّامٍ نَّحِسَاتٍ لِّنُذِيقَهُمْ عَذَابَ الْخِزْيِ فِي الْحَيَاةِ الدُّنْيَا ۖ وَلَعَذَابُ الْآخِرَةِ أَخْزَىٰ ۖ وَهُمْ لَا يُنصَرُونَ ﴿١٦﴾

१७. अत: तिनीहरूमाथि हामीले अमङ्गलसूचक दिनहरूमा प्रचण्ड आँधी चलायौं ताकि यस जीवनमै हामी तिनीहरूलाई अपमानजनक दण्ड चखाउन सकौं । तथा परलोकको दण्ड निश्चय नै त्यो भन्दा अधिक अपमानजनक हुनेछ, तथा तिनीहरूको सहयोग गरिनेछैन ।

وَأَمَّا ثَمُودُ فَهَدَيْنَاهُمْ فَاسْتَحَبُّوا الْعَمَىٰ عَلَى الْهُدَىٰ فَأَخَذَتْهُمْ صَاعِقَةُ الْعَذَابِ الْهُونِ بِمَا كَانُوا يَكْسِبُونَ ﴿١٧﴾

१८. तथा जहाँसम्म समूदजातिको प्रश्न छ, हामीले तिनीहरूलाई मार्गदर्शन प्रदान गर्‍यौं, परन्तु तिनीहरूले अन्धोपनालाई नै मार्गदर्शनको सट्टा प्राथमिकता दिए, अत:

तिनीहरूको कमाइका कारण एउटा अपमानजनक दण्डको विपत्तिले तिनीहरूलाई समात्यो ।

وَ نَجَّيْنَا الَّذِيْنَ اٰمَنُوْا وَ كَانُوْا يَتَّقُوْنَ ﴿١٨﴾

१९. तथा हामीले विश्वासी र पुण्यकर्मी व्यक्तिहरूलाई बचायौं ।

وَ يَوْمَ يُحْشَرُ اَعْدَآءُ اللّٰهِ اِلَى النَّارِ فَهُمْ يُوْزَعُوْنَ ﴿٢٠﴾

२०. तथा त्यसदिन जब अल्लाहका शत्रुहरूलाई एकत्रित गरी अग्नितर्फ लगिनेछ, तिनीहरू पंक्तिवद्ध भएर अघि बढ्नेछन् ।

حَتّٰۤى اِذَا مَا جَآءُوْهَا شَهِدَ عَلَيْهِمْ سَمْعُهُمْ وَ اَبْصَارُهُمْ وَ جُلُوْدُهُمْ بِمَا كَانُوْا يَعْمَلُوْنَ ﴿٢١﴾

२१. अत: जब तिनीहरू त्यहाँ पुग्नेछन्, तिनीहरूका कान र तिनीहरूका आँखा तथा तिनीहरूका छालाहरूले तिनीहरूले गर्ने गरेका कार्यहरूबारे तिनीहरूविरुद्ध साक्षी दिनेछन् ।

وَ قَالُوْا لِجُلُوْدِهِمْ لِمَ شَهِدْتُّمْ عَلَيْنَا ؕ قَالُوْۤا اَنْطَقَنَا اللّٰهُ الَّذِيْۤ اَنْطَقَ كُلَّ شَيْءٍ وَّ هُوَ خَلَقَكُمْ اَوَّلَ مَرَّةٍ وَّ اِلَيْهِ تُرْجَعُوْنَ ﴿٢١﴾

२२. तथा तिनीहरूले आफ्ना छालासित भन्नेछन्, "तिमीहरूले हामीविरुद्ध किन साक्षी दियौ?" तिनीहरूले उत्तर दिनेछन्, "जसले हरेक वस्तुलाई बोल्ने योग्य बनाएका छन् तिनै अल्लाहले हामीलाई समेत बोल्ने योग्य बनाएका हुन् । तथा ती उनी नै हुन् जसले तिमीहरूलाई पहिलोपटक सृष्टि गरे, तथा उनीतर्फै तिमीहरूलाई फर्काएर लगिनेछ ।

وَ مَا كُنْتُمْ تَسْتَتِرُوْنَ اَنْ يَّشْهَدَ عَلَيْكُمْ سَمْعُكُمْ وَ لَاۤ اَبْصَارُكُمْ وَ لَا جُلُوْدُكُمْ وَ لٰكِنْ ظَنَنْتُمْ اَنَّ اللّٰهَ لَا يَعْلَمُ كَثِيْرًا مِّمَّا تَعْمَلُوْنَ ﴿٢٢﴾

२३. "तथा (पाप गर्ने समयमा) तिमीहरूका कान र, आँखा तथा छालाले तिमीहरूविरुद्ध साक्षी दिनेछन् भनी तिमीहरू आशङ्का गर्दैनथ्यौ । होइन, (अपितु) तिमीहरूले गर्ने गरेका कार्यहरूमध्ये धेरैजसो कार्यहरूप्रति अल्लाह (समेत) अवगत थिएनन् भन्ने तिमीहरूको धारणा थियो ।

وَ ذٰلِكُمْ ظَنُّكُمُ الَّذِيْ ظَنَنْتُمْ بِرَبِّكُمْ اَرْدٰىكُمْ فَاَصْبَحْتُمْ مِّنَ الْخٰسِرِيْنَ ﴿٢٣﴾

२४. तथा तिमीहरूले आफ्ना प्रतिपालकका सम्बन्धमा पालेको त्यस धारणाले नै तिमीहरूलाई विनाश गऱ्यो ।

अतः (अब) तिमीहरू घाटाग्रस्त व्यक्तिहरूमा सामेल हुन पुगेका छौ ।"

فَإِنْ يَّصْبِرُوْا فَالنَّارُ مَثْوًى لَّهُمْ ۚ وَإِنْ يَّسْتَعْتِبُوْا فَمَا هُمْ مِّنَ الْمُعْتَبِيْنَ ﴿٢٤﴾

२५. अब यदि तिनीहरूले धैर्यधारण गर्न सकेमा अग्नि नै तिनीहरूको निवासस्थान रहेको छ, तथा यदि तिनीहरूले अनुरोध गरेमा तिनीहरू अनुरोध स्वीकार गरिने व्यक्तिहरूमा पर्नेछैनन् ।

وَقَيَّضْنَا لَهُمْ قُرَنَآءَ فَزَيَّنُوْا لَهُمْ مَّا بَيْنَ اَيْدِيْهِمْ وَمَا خَلْفَهُمْ وَحَقَّ عَلَيْهِمُ الْقَوْلُ فِيْٓ اُمَمٍ قَدْ خَلَتْ مِنْ قَبْلِهِمْ مِّنَ الْجِنِّ وَالْاِنْسِ ۚ اِنَّهُمْ كَانُوْا خٰسِرِيْنَ ﴿٢٥﴾

२६. तथा हामीले तिनीहरूसित केही यस्ता सहचरहरू लगाएका थियौं जसले तिनीहरू भन्दा पहिला गुज्रेका र तिनीहरूका सामुन्ने रहेका वस्तुहरूलाई सुन्दर तुल्याएर तिनीहरूलाई देखाउँथे, तथा तिनीहरूभन्दा पहिला गुज्रेका जिन्न (ठूला बडा मानिस) र साधारण मानिसहरूविरुद्ध जारी भएभैं तिनीहरूविरुद्ध पनि आदेश जारी भयो । निश्चय नै तिनीहरू घाटाग्रस्त व्यक्तिहरू थिए ।

وَقَالَ الَّذِيْنَ كَفَرُوْا لَا تَسْمَعُوْا لِهٰذَا الْقُرْاٰنِ وَالْغَوْا فِيْهِ لَعَلَّكُمْ تَغْلِبُوْنَ ﴿٢٦﴾

२७. तथा ती अविश्वासी व्यक्तिहरू भन्छन्, "त्यस कुरान (का शिक्षाहरू) प्रति कान नदेऊ, अपितु त्यसको (पाठ भइरहेको) समयमा होहल्ला मचाऊ ताकि तिमीहरू विजयी हुन सक ।"

فَلَنُذِيْقَنَّ الَّذِيْنَ كَفَرُوْا عَذَابًا شَدِيْدًا ۙ وَّلَنَجْزِيَنَّهُمْ اَسْوَاَ الَّذِيْ كَانُوْا يَعْمَلُوْنَ ﴿٢٧﴾

२८. तथा अविश्वासीहरूलाई हामी अवश्य नै कठोर दण्डको स्वाद चखाउने छौं, तथा अवश्य तिनीहरूका निकृष्ट कर्महरूको हामी तिनीहरूलाई प्रतिदान प्रदान गर्नेछौं ।

ذٰلِكَ جَزَآءُ اَعْدَآءِ اللّٰهِ النَّارُ ۚ لَهُمْ فِيْهَا دَارُ الْخُلْدِ ۚ جَزَآءً ۢ بِمَا كَانُوْا بِاٰيٰتِنَا يَجْحَدُوْنَ ﴿٢٨﴾

२९. यही नै अल्लाहका शत्रुहरूको प्रतिदान रहेको छ– अग्नि । तिनीहरूले हाम्रा निर्देशनहरूको अस्वीकार गर्ने गरेको फलस्वरूप तिनीहरूलाई त्यहाँ सदा रहने गृह प्राप्त हुनेछ ।

وَقَالَ الَّذِينَ كَفَرُوا رَبَّنَا أَرِنَا الَّذَيْنِ أَضَلَّانَا مِنَ الْجِنِّ وَالْإِنسِ نَجْعَلْهُمَا تَحْتَ أَقْدَامِنَا لِيَكُونَا مِنَ الْأَسْفَلِينَ ﴿٣٠﴾

३०. तथा ती अविश्वासीहरूले भन्नेछन्, "हे हाम्रा प्रतिपालक, तिमी हामीलाई जिन्न र मानवमध्ये ती व्यक्तिहरू देखाऊ जसले हामीलाई पथभ्रष्ट तुल्याएका थिए, ताकि तिनीहरूलाई हामी आफ्ना पाउमनि कुल्च्यौं जसबाट तिनीहरू दुबै अपमानित व्यक्तिहरूमध्येका बनून् ।"

إِنَّ الَّذِينَ قَالُوا رَبُّنَا اللَّهُ ثُمَّ اسْتَقَامُوا تَتَنَزَّلُ عَلَيْهِمُ الْمَلَائِكَةُ أَلَّا تَخَافُوا وَلَا تَحْزَنُوا وَأَبْشِرُوا بِالْجَنَّةِ الَّتِي كُنتُمْ تُوعَدُونَ ﴿٣١﴾

३१. ती व्यक्तिहरू, जसले भन्छन्, "हाम्रा प्रतिपालक त अल्लाह हुन्," र त्यसपछि धैर्यधारण गर्ने गर्छन्, तिनीहरूप्रति देवदूतहरू के भन्दै उत्रन्छन् भने, "तिमीहरू नडराऊ, न त दुखित हुने गर, तथा तिमीहरूसित वाचा गरिएको बगैंचामा आनन्द उपभोग गर ।

نَحْنُ أَوْلِيَاؤُكُمْ فِي الْحَيَاةِ الدُّنْيَا وَفِي الْآخِرَةِ ۖ وَلَكُمْ فِيهَا مَا تَشْتَهِي أَنفُسُكُمْ وَلَكُمْ فِيهَا مَا تَدَّعُونَ ﴿٣٢﴾

३२. यस संसारमा र परलोकमा हामी तिमीहरूका मित्र रहेका छौं । त्यहाँ तिमीहरूलाई आफ्नो मनले चाहेका सम्पूर्ण वस्तुहरू प्राप्त हुनेछन्, तथा त्यहाँ तिमीहरूलाई तिमीहरूले मागेका सम्पूर्ण वस्तुहरू मिल्नेछन् –

نُزُلًا مِّنْ غَفُورٍ رَّحِيمٍ ﴿٣٣﴾

ع ٤ ١٨

३३. परम क्षमाशील, परम दानशील (अल्लाह)का तर्फबाट यो आतिथ्यस्वरूप रहेको छ ।"

وَمَنْ أَحْسَنُ قَوْلًا مِّمَّن دَعَا إِلَى اللَّهِ وَعَمِلَ صَالِحًا وَقَالَ إِنَّنِي مِنَ الْمُسْلِمِينَ ﴿٣٤﴾

३४. तथा त्यस व्यक्तिको भन्दा उत्तम वार्ता कसको हुन सक्छ? जसले (मानिसहरूलाई) अल्लाहतर्फ बोलाउँछ र पुण्यकार्य गर्छ तथा भन्छ,"म निश्चय नै आज्ञाकारी व्यक्तिहरूमध्ये एक रहेको छु ।"

وَلَا تَسْتَوِي الْحَسَنَةُ وَلَا السَّيِّئَةُ ۚ ادْفَعْ بِالَّتِي هِيَ أَحْسَنُ فَإِذَا الَّذِي بَيْنَكَ وَبَيْنَهُ عَدَاوَةٌ كَأَنَّهُ وَلِيٌّ حَمِيمٌ ﴿٣٥﴾

३५. तथा पुण्य र पाप एकसमान हुन सक्दैनन् । (नराम्रो कुराको) जवाफ तिमी उत्तम कुराद्वारा देउ । तथा हेर, त्यो व्यक्ति जसको र तिम्रो बीचमा शत्रुता रहेको थियो त्यो -व्यक्ति) तिम्रो घनिष्ठ मित्र बन्न पुग्नेछ ।

وَمَا يُلَقّٰىهَآ اِلَّا الَّذِيْنَ صَبَرُوْا ۚ وَمَا يُلَقّٰىهَآ اِلَّا ذُوْ حَظٍّ عَظِيْمٍ ﴿٣٦﴾

३६. परन्तु धैर्यधारी व्यक्तिहरूबाहेक अन्य कसैलाई यसको सौभाग्य प्राप्त हुन सक्दैन, तथा यसैप्रकार केवल (कल्याणको) ठूलो भाग प्राप्त व्यक्तिलाई मात्र यसको सौभाग्य प्राप्त हुन्छ ?

وَاِمَّا يَنْزَغَنَّكَ مِنَ الشَّيْطٰنِ نَزْغٌ فَاسْتَعِذْ بِاللّٰهِ ۚ اِنَّهٗ هُوَ السَّمِيْعُ الْعَلِيْمُ ﴿٣٧﴾

३७. तथा यदि शैतानको कुनै उत्तेजनापूर्ण कुराले तिमीलाई उत्तेजित तुल्याएमा, तिमी अल्लाहको शरण याचना गर । निश्चय नै उनी सर्वश्रोता, सर्वज्ञ छन् ।

وَمِنْ اٰيٰتِهِ الَّيْلُ وَالنَّهَارُ وَالشَّمْسُ وَالْقَمَرُ ۚ لَا تَسْجُدُوْا لِلشَّمْسِ وَلَا لِلْقَمَرِ وَاسْجُدُوْا لِلّٰهِ الَّذِيْ خَلَقَهُنَّ اِنْ كُنْتُمْ اِيَّاهُ تَعْبُدُوْنَ ﴿٣٨﴾

३८. तथा उनका चिह्नहरूमध्ये रात्रि र दिन तथा सूर्य र चन्द्रमा रहेका छन् । अत: सूर्यलाई तिमीहरू दण्डवत प्रणाम नगर, न त चन्द्रमालाई नै, परन्तु जसले तिनीहरूलाई सृष्टि गरे, यदि तिमीहरू (वास्तवमै) उनको उपासना गर्छौ भने, अल्लाहकै सामुन्ने दण्डवत प्रणाम गर ।

فَاِنِ اسْتَكْبَرُوْا فَالَّذِيْنَ عِنْدَ رَبِّكَ يُسَبِّحُوْنَ لَهٗ بِالَّيْلِ وَالنَّهَارِ وَهُمْ لَا يَسْـَٔمُوْنَ ۩ ﴿٣٩﴾

३९. परन्तु यदि तिनीहरू अहङ्कारका साथ विमुख भएमा (आफ्नै अनिष्टसाधनका निम्ति तिनीहरूले त्यसो गर्नेछन्), वस्तुत: तिम्रा प्रतिपालकका निकटस्थ व्यक्तिहरू भने रातदिन उनकै गुणगान गर्छन्, तथा तिनीहरू कहिल्यै थकित हुँदैनन् ।

وَمِنْ اٰيٰتِهٖٓ اَنَّكَ تَرَى الْاَرْضَ خَاشِعَةً فَاِذَآ اَنْزَلْنَا عَلَيْهَا الْمَآءَ اهْتَزَّتْ وَرَبَتْ ۚ اِنَّ الَّذِيْٓ اَحْيَاهَا لَمُحْيِ الْمَوْتٰى ۚ اِنَّهٗ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ﴿٤٠﴾

४०. तथा उनका चिह्नहरूमध्ये के पनि हो भने, तिमीहरू पृथ्वीलाई सुकेको देख्छौ, परन्तु जब हामी त्यसमाथि पानी बर्साउँछौं, तब त्यो जाग्छ र (हरियो-परियो) उब्जाउँछ । निश्चय नै जसले त्यसलाई जीवित गरे उनले मुर्दालाई जीवित गर्न सक्छन् । वस्तुत: सम्पूर्ण वस्तुहरूमाथि उनी पूर्ण सामर्थ्यवान रहेका छन् ।

اِنَّ الَّذِيْنَ يُلْحِدُوْنَ فِيْٓ اٰيٰتِنَا لَا يَخْفَوْنَ عَلَيْنَا ۗ اَفَمَنْ يُّلْقٰى فِى النَّارِ

४१. निश्चय नै, ती व्यक्तिहरू, जो हाम्रा निर्देशनहरूका सम्बन्धमा विवाद गर्छन् तिनीहरू हामीबाट गुप्त रहेका छैनन् । अत: के जसलाई अग्निमा हालिन्छ त्यो

خَيْرٌ اَمْ مَّنْ يَّاْتِيْٓ اٰمِنًا يَّوْمَ الْقِيٰمَةِ ۚ اِعْمَلُوْا مَا شِئْتُمْ ۙ اِنَّهٗ بِمَا تَعْمَلُوْنَ بَصِيْرٌ ﴿٤٠﴾

व्यक्ति उत्तम रहेको छ अथवा त्यो व्यक्ति जो पुनरुत्थानका दिन सुरक्षित निस्कन्छ? तिमीहरूलाई जे इच्छा लाग्छ त्यही गर । निश्चय नै तिमीहरूका सम्पूर्ण कार्यहरूलाई उनी देखिरहेछन् ।

اِنَّ الَّذِيْنَ كَفَرُوْا بِالذِّكْرِ لَمَّا جَآءَهُمْ ۚ وَاِنَّهٗ لَكِتٰبٌ عَزِيْزٌ ﴿٤١﴾

४२. जुन व्यक्तिहरू यस सतर्कवाणी (कुरान) को आगमनपश्चात् त्यसप्रति अविश्वास गर्छन् (तिनीहरू नै घाटाग्रस्त रहेका छन्) । तथा, निस्सन्देह यो एउटा महान पुस्तक रहेको छ ।

لَّا يَاْتِيْهِ الْبَاطِلُ مِنْۢ بَيْنِ يَدَيْهِ وَلَا مِنْ خَلْفِهٖ ۚ تَنْزِيْلٌ مِّنْ حَكِيْمٍ حَمِيْدٍ ﴿٤٢﴾

४३. यसको सामुन्नेबाट होस् अथवा (चाहे) यसको पछिल्तिरबाट होस् मिथ्यावाद यसको निकट आउनै सक्दैन । (यो) परम तत्वज्ञ, परम प्रशंसनीय (अल्लाह) का तर्फबाट अवतीर्ण भएको हो ।

مَا يُقَالُ لَكَ اِلَّا مَا قَدْ قِيْلَ لِلرُّسُلِ مِنْ قَبْلِكَ ۚ اِنَّ رَبَّكَ لَذُوْ مَغْفِرَةٍ وَّذُوْ عِقَابٍ اَلِيْمٍ ﴿٤٣﴾

४४. जुनकुरा तिमीभन्दा पहिलाका सन्देशवाहकहरूलाई भनिएको थियो केवल त्यही कुरा तिमीलाई भनिन्छ । तिम्रा प्रतिपालक निश्चयपूर्वक परम क्षमावान रहेका छन्, तथा उनी पीडादायक दण्डका (पनि) स्वामी रहेका छन् ।

وَلَوْ جَعَلْنٰهُ قُرْاٰنًا اَعْجَمِيًّا لَّقَالُوْا لَوْلَا فُصِّلَتْ اٰيٰتُهٗ ۚ ءَاَعْجَمِيٌّ وَّعَرَبِيٌّ ۚ قُلْ هُوَ لِلَّذِيْنَ اٰمَنُوْا هُدًى وَّشِفَآءٌ ۚ وَالَّذِيْنَ لَا يُؤْمِنُوْنَ فِيْٓ اٰذَانِهِمْ وَقْرٌ وَّهُوَ عَلَيْهِمْ عَمًى ۚ اُولٰٓئِكَ يُنَادَوْنَ مِنْ مَّكَانٍۢ بَعِيْدٍ ﴿٤٤﴾

४५. तथा यदि हामीले यस कुरानलाई कुनै अर्कै भाषामा प्रस्तुत गरेका भए, तिनीहरूले निश्चय नै के भन्ने थिए भने, "यसका आयातहरूलाई किन स्पष्टरूपमा वर्णन गरिएन? के ! एउटा विदेशी भाषा र अरबी नबीमा कुनै समानता छ?" तिमी भन, "यो ता विश्वासीजनका निम्ति मार्गदर्शन र उपचारस्वरूप रहेको छ ।" परन्तु जसले विश्वास गर्दैनन्, तिनीहरूको कानमा भने बहिरोपना रहेको छ र त्यो तिनीहरूबाट अदृश्य रहेको छ । तिनीहरू (मानौं) यस्ता व्यक्तिहरू हुन जसलाई टाढाबाट बोलाइन्छ ।

وَلَقَدْ اٰتَيْنَا مُوْسَى الْكِتٰبَ فَاخْتُلِفَ فِيْهِ ۗ وَلَوْلَا كَلِمَةٌ سَبَقَتْ مِنْ رَّبِّكَ لَقُضِيَ بَيْنَهُمْ ۗ وَاِنَّهُمْ لَفِيْ شَكٍّ مِّنْهُ مُرِيْبٍ ۝

४६. तथा हामीले मूसालाई पुस्तक प्रदान गरेका थियौं, परन्तु त्यसका सम्बन्धमा मतभेद सृष्टि गरिएको थियो, तथा यदि तिम्रा प्रतिपालकका तर्फबाट एउटा वचन पहिला नै नगुज्रिएको भए ता तिनीहरूका बीचमा त्यस मामिलाको निर्णय भइसक्ने थियो, तथा निश्चयपूर्वक तिनीहरू त्यसका सम्बन्धमा एउटा बेचैन तुल्याउने सन्देहमा डुबेका छन् ।

مَنْ عَمِلَ صَالِحًا فَلِنَفْسِهٖ وَمَنْ اَسَآءَ فَعَلَيْهَا ۗ وَمَا رَبُّكَ بِظَلَّامٍ لِّلْعَبِيْدِ ۝

४७. जसले पुण्यकर्म गर्छ, त्यसको लाभ त्यसैको आत्मालाई पुग्नेछ, तथा जसले अपकर्म गर्छ, त्यो (केवल) उसकै विरुद्धमा (जानेछ) । तथा तिम्रा प्रतिपालक (आफ्ना) सेवकहरूमाथि कदापि कुनै प्रकारको अन्याय गर्दैनन् ।

اِلَيْهِ يُرَدُّ عِلْمُ السَّاعَةِ ۗ وَمَا تَخْرُجُ مِنْ ثَمَرٰتٍ مِّنْ اَكْمَامِهَا وَمَا تَحْمِلُ مِنْ اُنْثٰى وَلَا تَضَعُ اِلَّا بِعِلْمِهٖ ۗ وَيَوْمَ يُنَادِيْهِمْ اَيْنَ شُرَكَآءِيْ ۙ قَالُوْٓا اٰذَنّٰكَ ۙ مَا مِنَّا مِنْ شَهِيْدٍ ۝

४८. निर्धारित घडीको ज्ञान (केवल) उनीतर्फै प्रत्यावर्तन गिरिन्छ । तथा गाभाबाट जुन फलहरू निस्कन्छन् अथवा कुनै महिलाले जुन -बालक) गर्भमा उठाउँछे अथवा (त्यसलाई) जन्माउँछे, परन्तु उनले (ती सबै कुरा) जान्दछन् । तथा त्यसदिन (बारे सोच) जब उनले तिनीहरूलाई (के भन्दै) बोलाउने छन् (भने), "मेरा (नाममा बनाइएका) सहभागीहरू" कहाँ छन् त?" तिनीहरूले भन्नेछन्, "हामी स्पष्टरूपमा तिमीलाई के भन्छौं भने, हामीमध्ये कोही पनि (त्यस कुराको) साक्षी छैन ।"

وَضَلَّ عَنْهُمْ مَّا كَانُوْا يَدْعُوْنَ مِنْ قَبْلُ وَظَنُّوْا مَا لَهُمْ مِّنْ مَّحِيْصٍ ۝

४९. तथा तिनीहरूले पहिला पुकार्ने गरेका सम्पूर्ण वस्तुहरू तिनीहरूबाट अदृश्य हुनेछन्, तब तिनीहरूका निम्ति कुनै भाग्ने मौका रहेको छैन भन्ने कुरा तिनीहरूले जान्नेछन् ।

لَا يَسْـَٔمُ الْاِنْسَانُ مِنْ دُعَآءِ الْخَيْرِ ۫ وَاِنْ مَّسَّهُ الشَّرُّ فَيَـُٔوْسٌ قَنُوْطٌ ﴿٥٠﴾

५०. मानिस राम्रो कुराको प्राप्तिका निम्ति प्रार्थना गरेर कहिल्यै थकित हुँदैन; परन्तु यदि उसमाथि सङ्कट आइलागेमा, निराश भएर आशाहरू त्याग्न पुग्छ ।

وَلَئِنْ اَذَقْنٰهُ رَحْمَةً مِّنَّا مِنْۢ بَعْدِ ضَرَّآءَ مَسَّتْهُ لَيَقُوْلَنَّ هٰذَا لِيْ ۙ وَمَآ اَظُنُّ السَّاعَةَ قَآئِمَةً ۙ وَّلَئِنْ رُّجِعْتُ اِلٰى رَبِّيْٓ اِنَّ لِيْ عِنْدَهٗ لَلْحُسْنٰى ۚ فَلَنُنَبِّئَنَّ الَّذِيْنَ كَفَرُوْا بِمَا عَمِلُوْا ۫ وَلَنُذِيْقَنَّهُمْ مِّنْ عَذَابٍ غَلِيْظٍ ﴿٥١﴾

५१. तथा यदि उसमाथि आइलागेको सङ्कटपश्चात् हामीले उसलाई आफ्ना जुनाफबाट करुणाको स्वाद चखाएमा, उसले निश्चितरूपमा (के) भन्नेछ (भने), "यो ता मेरो प्राप्य अधिकार हो; तथा निर्धारित घडी (कहिल्यै) आउला भन्ने म ठान्दिन । परन्तु यदि मलाई आफ्ना प्रतिपालकतर्फ फर्काइयो भने पनि, मलाई उनका जुनाफमा उत्तम (पुरस्कार) प्राप्त हुनेछ ।"त्यसपछि अविश्वासी व्यक्तिहरूलाई हामी अवश्य तिनीहरूका कार्यहरूबारे अवगत गराउनेछौं, तथा निश्चयपूर्वक हामी तिनीहरूलाई कठोर दण्ड (को स्वाद) चखाउनेछौं ।

وَاِذَآ اَنْعَمْنَا عَلَى الْاِنْسَانِ اَعْرَضَ وَنَاٰ بِجَانِبِهٖ ۚ وَاِذَا مَسَّهُ الشَّرُّ فَذُوْ دُعَآءٍ عَرِيْضٍ ﴿٥٢﴾

५२. तथा जब हामी मानिसमाथि अनुग्रह गर्छौं, तब त्यो (त्यसलाई) उपेक्षा गरी एकातर्फ फर्किन्छ, परन्तु जब उसमाथि सङ्कट आइलाग्छ, तब हेर ! उसले लामो प्रार्थना गर्न थाल्छ ।

قُلْ اَرَءَيْتُمْ اِنْ كَانَ مِنْ عِنْدِ اللّٰهِ ثُمَّ كَفَرْتُمْ بِهٖ مَنْ اَضَلُّ مِمَّنْ هُوَ فِيْ شِقَاقٍۢ بَعِيْدٍ ﴿٥٣﴾

५३. तिमी भन, "तिमीहरू मलाई भन त: "यदि यो (कुरान) अल्लाहका तर्फबाट रहेमा र तिमीहरूले यसप्रति अविश्वास गरेमा– जुन व्यक्तिले (अल्लाहबाट) दूरी अवलम्बन गर्छ त्योभन्दा अधिक पथभ्रष्ट को हुनसक्छ र ?"

سَنُرِيْهِمْ اٰيٰتِنَا فِى الْاٰفَاقِ وَفِيْٓ اَنْفُسِهِمْ حَتّٰى يَتَبَيَّنَ لَهُمْ اَنَّهُ الْحَقُّ ۭ اَوَلَمْ يَكْفِ بِرَبِّكَ اَنَّهٗ عَلٰى كُلِّ شَيْءٍ شَهِيْدٌ ﴿٥٤﴾

५४. हामी शीघ्र नै तिनीहरूलाई क्षितिजमा तथा तिनीहरूस्वयम्मा (प्रकट हुने गरी) हाम्रा चिह्नहरू देखाउनेछौं जसबाट यो (कुरान) सत्य हो भन्ने कुरा तिनीहरूसमक्ष स्पष्ट हुनेछ । के तिम्रा

प्रतिपालक सम्पूर्ण वस्तुहरूका साक्षी हुनु पर्याप्त रहेको छैन र ?

५५. सुन, तिनीहरू निश्चय नै आफ्ना प्रतिपालकसित हुने साक्षात्कारका सम्बन्धमा सशङ्कित छन् । सुन, उनले निस्सन्देह सम्पूर्ण वस्तुहरूलाई घेरेर राखेका छन् ।

أَلَآ إِنَّهُمۡ فِي مِرۡيَةٖ مِّن لِّقَآءِ رَبِّهِمۡۗ
أَلَآ إِنَّهُۥ بِكُلِّ شَيۡءٖ مُّحِيطُۢ ﴿٥٤﴾

سُوْرَةُ الشُّوْرٰى مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ اَرْبَعٌ وَّخَمْسُوْنَ اٰيَةً وَّخَمْسَةُ رُكُوْعَاتٍ

## अल्–शूरा
(हिजरतअघि अवतरित)

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

२. हा मिम* ।

حٰمٓ ②

३. ऐन सिन काफ** ।

عٓسٓقٓ ③

४. परम पराक्रमी, तत्वज्ञ, अल्लाहले यसै प्रकार तिमीप्रति आकाशवाणी गर्छन् तथा तिमीभन्दा पहिलाका व्यक्तिहरूप्रति पनि आकाशवाणी गरेका हुन् ।

كَذٰلِكَ يُوْحِيْٓ اِلَيْكَ وَ اِلَى الَّذِيْنَ مِنْ قَبْلِكَ ۙ اللّٰهُ الْعَزِيْزُ الْحَكِيْمُ ④

५. आकाशमण्डल र पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरू उनकै हुन, तथा उनी अति उच्च, महान रहेका छन् ।

لَهٗ مَا فِي السَّمٰوٰتِ وَ مَا فِي الْاَرْضِ ۭ وَ هُوَ الْعَلِيُّ الْعَظِيْمُ ⑤

६. आकाशमण्डल आफ्नो सर्वोच्चतमा टुका टुका भएर झर्न सक्छ, तथा देवदूतहरू आफ्ना प्रतिपालकको प्रशंसाका साथ उनको गुनगान गर्छन्, तथा पृथ्वीमा रहेका मानिसहरूका निम्ति क्षमायाचना गर्छन् । सुन ! अल्लाह निश्चयपूर्वक परम क्षमाशील, परम करुणाशील छन् ।

تَكَادُ السَّمٰوٰتُ يَتَفَطَّرْنَ مِنْ فَوْقِهِنَّ وَ الْمَلٰٓئِكَةُ يُسَبِّحُوْنَ بِحَمْدِ رَبِّهِمْ وَ يَسْتَغْفِرُوْنَ لِمَنْ فِي الْاَرْضِ ۭ اَلَآ اِنَّ اللّٰهَ هُوَ الْغَفُوْرُ الرَّحِيْمُ ⑥

७. तथा जसले (स्वयम्का निम्ति) उनलाई छाडी अन्य वस्तुहरूलाई आफ्ना संरक्षक तुल्याउने गर्छन्, तिनीहरूलाई अल्लाहले देखिरहेछन्, तथा तिमी तिनहरूका संरक्षक होइनौ ।

وَ الَّذِيْنَ اتَّخَذُوْا مِنْ دُوْنِهٖٓ اَوْلِيَآءَ اللّٰهُ حَفِيْظٌ عَلَيْهِمْ ۡ وَ مَآ اَنْتَ عَلَيْهِمْ بِوَكِيْلٍ ⑦

---

* परम प्रशंसनीय, महिमामय ।

** सर्वज्ञ, सर्वस्रोता, सर्वशक्तिमान ।

وَكَذٰلِكَ اَوْحَيْنَآ اِلَيْكَ قُرْاٰنًا عَرَبِيًّا لِّتُنْذِرَ اُمَّ الْقُرٰى وَمَنْ حَوْلَهَا وَتُنْذِرَ يَوْمَ الْجَمْعِ لَا رَيْبَ فِيْهِ ۚ فَرِيْقٌ فِى الْجَنَّةِ وَفَرِيْقٌ فِى السَّعِيْرِ ۝

८. इसै प्रकार हामीले तिमीप्रति कुरानलाई अरबी भाषामा अवतीर्ण गरेका छौं, ताकि तिमी नगरहरूकी मातृ* मक्का) तथा त्यसका चौतर्फ रहने व्यक्तिहरूलाई सावधान गर, तथा (ताकि) तिनीहरूलाई त्यस एकत्रित गरिने दिनप्रति सावधान गर जसका सम्बन्धमा कुनै सन्देह छैनः एउटा समूह (स्वर्गका) बगैंचाभित्र रहनेछ भने एउटा समूह चाहिँ प्रज्वलित अग्निमा ।

وَلَوْ شَآءَ اللّٰهُ لَجَعَلَهُمْ اُمَّةً وَّاحِدَةً وَّلٰكِنْ يُّدْخِلُ مَنْ يَّشَآءُ فِيْ رَحْمَتِهٖ ۚ وَالظّٰلِمُوْنَ مَا لَهُمْ مِّنْ وَّلِيٍّ وَّلَا نَصِيْرٍ ۝

९. तथा यदि अल्लाहले चाहेका भए तिनीहरूलाई एउटै जाति बनाउने थिए। परन्तु उनले जसलाई चाहन्छन् आफ्नो करुणामा दाखिल गर्छन् । तथा अत्याचारीहरूको भने न कोही संरक्षक हुनेछ न सहयोगी नै ।

اَمِ اتَّخَذُوْا مِنْ دُوْنِهٖٓ اَوْلِيَآءَ ۚ فَاللّٰهُ هُوَ الْوَلِيُّ وَهُوَ يُحْيِ الْمَوْتٰى ۡ وَهُوَ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ۝

१०. के तिनीहरूले (स्वयम्का निम्ति) उनलाई छाडी अन्य वस्तुहरूलाई संरक्षक तुल्याएका छन् ? परन्तु अल्लाह नै वास्तविक) संरक्षक रहेका छन् । तथा उनी मुर्दालाई जीवित गर्छन्, र सम्पूर्ण वस्तुहरूमाथि उनी पूर्ण सामर्थ्यवान रहेका छन् ।

---

* अल्लाहको उपासनाका निम्ति सर्वप्रथम निर्माण गरिएको घर अल्-का"बा नै थियो जुन मक्का नगरमा अवस्थित थियो । त्यो त्यही नगर हो जसको उल्लेख "उम्मुल्-कुरा" (اُمُّ الْقُرٰى) (नगरहरूकी मातृ) स्वरुप गरिएको छ ।

उक्त अभिव्यक्तिले त्यसको अन्य सम्पूर्ण नगरहरूसित रहेको सम्बन्धको महत्वतर्फ सङ्केत गर्छ । अथवा यसको शाब्दिक अर्थ पनि हुन सक्छ । अर्थात्, सम्पूर्ण नगरहरूमध्ये सर्वप्रथम निर्माण गरिएको नगर । त्यस दृष्टिकोणले हेर्ने हो भने यसले अतीततर्फ सङ्केत गर्नेछ । तथा जहाँ मक्का अवस्थित छ त्यहाँ अल्लाहको त्यस घरको चारैतर्फ क्रमशः एउटा नगर विस्तार हुन लाग्यो र प्रारम्भमा त्यो नगर केही अपरिचित मानिसहरूद्वारा निर्माण गरिएको थियो । मानवजातिले त्यसैको अनुकरण गरी नगरहरू निर्माण गर्न सिके । त्यसै कारणले पनि त्यसलाई सम्पूर्ण नगरहरूकी मातृस्वरुप वर्णन गरिएको हुन सक्छ ।

११. तथा जुन कुराहरूमा तिमीहरूको मतभेद रहेको छ त्यसको निर्णय अल्लाहको हातमा (रहेको) छ । (तिमी भन), मेरा प्रतिपालक, अल्लाह यस्तै छन्, म उनैमाथि भरोसा गर्छु, तथा उनीतर्फै म (सदा) भुकिरहन्छु ।

وَمَا اخْتَلَفْتُمْ فِيهِ مِنْ شَيْءٍ فَحُكْمُهُ إِلَى اللَّهِ ذَٰلِكُمُ اللَّهُ رَبِّي عَلَيْهِ تَوَكَّلْتُ وَإِلَيْهِ أُنِيبُ ﴿١١﴾

१२. आकाशमण्डल र पृथ्वीका प्रकृत सिर्जनहार उनी नै हुन् । उनले तिमीहरूको फाइदाका निम्ति तिमीहरूबाटै जोडीहरू बनाए, तथा चौपायाहरूबाट पनि जोडीहरू बनाए । त्यहाँ उनले तिमीहरूको सङ्ख्या वृद्धि गर्छन् । उनी सदृश अन्य कोही छैन, तथा उनी सर्वश्रोता, सर्वद्रष्टा छन् ।

فَاطِرُ السَّمَاوَاتِ وَالْأَرْضِ جَعَلَ لَكُمْ مِنْ أَنْفُسِكُمْ أَزْوَاجًا وَمِنَ الْأَنْعَامِ أَزْوَاجًا يَذْرَؤُكُمْ فِيهِ لَيْسَ كَمِثْلِهِ شَيْءٌ وَهُوَ السَّمِيعُ الْبَصِيرُ ﴿١٢﴾

१३. आकाशमण्डल र पृथ्वीका कुञ्जीहरू उनकै हातमा छन् । उनले जसका निम्ति चाहन्छन् जीविका(का साधनहरू) विस्तृत तुल्याउँछन् तथा (जसका निम्ति उनले चाहन्छन् त्यसलाई) सङ्कीर्ण तुल्याइदिन्छन् । उनले सम्पूर्ण वस्तुहरूलाई राम्ररी जान्दछन्

لَهُ مَقَالِيدُ السَّمَاوَاتِ وَالْأَرْضِ يَبْسُطُ الرِّزْقَ لِمَنْ يَشَاءُ وَيَقْدِرُ إِنَّهُ بِكُلِّ شَيْءٍ عَلِيمٌ ﴿١٣﴾

१४. उनले तिमीहरूका निम्ति त्यही धर्म निर्धारण गरेका छन् जुन धर्मको उनले नूहलाई आदेश दिएका थिए, तथा जुनकुरा हामीले तिमीप्रति अवतीर्ण गरेका छौं, तथा जसको आदेश हामीले इब्राहिम र मूसा तथा ईसालाई (के भन्दै) दिएका थियौं (भने), "आज्ञाकारितामा धैर्यका साथ स्थिर रहने गर, तथा त्यस सम्बन्धमा कदापि मतभेद नगर । मूर्तिपुजकहरूलाई त्यो कुरा अति कठिन अनुभव हुन्छ जुनकुरातर्फ उनीहरूलाई तिमी आह्वान गर्छौं । अल्लाहले जसलाई चाहन्छन् स्वयम्का निम्ति चुन्छन् तथा जो व्यक्ति (उनीतर्फ) भुक्छ त्यसैलाई आफूतर्फ मार्ग देखाउँछन् ।"

شَرَعَ لَكُمْ مِنَ الدِّينِ مَا وَصَّىٰ بِهِ نُوحًا وَالَّذِي أَوْحَيْنَا إِلَيْكَ وَمَا وَصَّيْنَا بِهِ إِبْرَاهِيمَ وَمُوسَىٰ وَعِيسَىٰ أَنْ أَقِيمُوا الدِّينَ وَلَا تَتَفَرَّقُوا فِيهِ كَبُرَ عَلَى الْمُشْرِكِينَ مَا تَدْعُوهُمْ إِلَيْهِ اللَّهُ يَجْتَبِي إِلَيْهِ مَنْ يَشَاءُ وَيَهْدِي إِلَيْهِ مَنْ يُنِيبُ ﴿١٤﴾

وَمَا تَفَرَّقُوْٓا اِلَّا مِنْۢ بَعْدِ مَا جَآءَهُمُ الْعِلْمُ بَغْيًۢا بَيْنَهُمْ ؕ وَلَوْ لَا كَلِمَةٌ سَبَقَتْ مِنْ رَّبِّكَ اِلٰٓى اَجَلٍ مُّسَمًّى لَّقُضِيَ بَيْنَهُمْ ؕ وَاِنَّ الَّذِيْنَ اُوْرِثُوا الْكِتٰبَ مِنْۢ بَعْدِهِمْ لَفِيْ شَكٍّ مِّنْهُ مُرِيْبٍ ﴿١٤﴾

१५. तथा तिनीहरूले मतभेद गरेनन् र विभाजित भएनन् परन्तु तिनीहरूसमक्ष ज्ञानको आगमन भएपश्चात्, परस्पर द्वेषभावका कारण तिनीहरूले त्यसो गरे । तथा यदि एउटा निर्धारित समयसम्मका निम्ति तिम्रा प्रतिपालक का तर्फबाट वचन नगुज्रिसकेको भए ता (त्यस मामिलाको) तिनीहरूका बीचमा निश्चय नै निर्णय भइसक्ने थियो । तथा जसलाई तिनीहरूपश्चात् त्यस पुस्तकका उत्तराधिकारी बनाइएको थियो तिनीहरू निश्चय नै त्यस (पुस्तक) लाई लिएर व्याकुल तुल्याउने सन्देहमा डुब्न पुगेका छन् ।

فَلِذٰلِكَ فَادْعُ ۚ وَاسْتَقِمْ كَمَآ اُمِرْتَ ۚ وَلَا تَتَّبِعْ اَهْوَآءَهُمْ ۚ وَقُلْ اٰمَنْتُ بِمَآ اَنْزَلَ اللّٰهُ مِنْ كِتٰبٍ ۚ وَاُمِرْتُ لِاَعْدِلَ بَيْنَكُمْ ؕ اَللّٰهُ رَبُّنَا وَرَبُّكُمْ ؕ لَنَآ اَعْمَالُنَا وَلَكُمْ اَعْمَالُكُمْ ؕ لَا حُجَّةَ بَيْنَنَا وَبَيْنَكُمْ ؕ اَللّٰهُ يَجْمَعُ بَيْنَنَا ۚ وَاِلَيْهِ الْمَصِيْرُ ﴿١٥﴾

१६. अतः तिमी (मानवजातिलाई) त्यही (धर्म)तर्फ आह्वान गर । तथा तिमीलाई दिइएको आदेशानुसार तिमी धैर्यधारण गर, र तिनीहरूका कुमनोवाञ्छाहरूको अनुसरण नगर, परन्तु के भन भने, "अल्लाहले पुस्तकमा जुनकुरा अवतीर्ण गरेका छन् त्यसप्रति म विश्वास गर्छु, तथा मलाई तिमीहरूका बीचमा न्यायपूर्वक निर्णय गर्ने आदेश दिइएको छ । अल्लाह हाम्रा प्रतिपालक हुन्, तथा तिमीहरूका पनि प्रतिपालक हुन् । हामीलाई हाम्रै कर्मको प्रतिफल मिल्नेछ तथा तिमीहरूलाई तिमीहरूकै कर्मको प्रतिफल मिल्नेछ । हामी र तिमीहरूका बीचमा कुनै झगडा छैन । अल्लाहले हामीहरूलाई एकत्रित गर्नेछन्, तथा उनीतर्फै फर्केर जानु छ ।"

وَالَّذِيْنَ يُحَآجُّوْنَ فِي اللّٰهِ مِنْۢ بَعْدِ مَا اسْتُجِيْبَ لَهٗ حُجَّتُهُمْ دَاحِضَةٌ عِنْدَ رَبِّهِمْ وَعَلَيْهِمْ غَضَبٌ وَّلَهُمْ عَذَابٌ شَدِيْدٌ ﴿١٦﴾

१७. जुन व्यक्तिहरू अल्लाहका सम्बन्धमा उनलाई स्वीकार गरिएपश्चात् विवाद गर्छन्– तिनीहरूका प्रतिपालकका दृष्टिमा तिनीहरूको विवाद निरर्थक रहेको छ, तथा तिनीहरूमाथि (अल्लाहको) अभिशाप अवतीर्ण हुनेछ र तिनीहरूलाई कठोर दण्ड

मिल्नेछ ।

१८. अल्लाह उनी नै हुन् जसले सत्यमा आधारित पुस्तक तथा मिजान (संतुलन) अवतीर्ण गरेका छन् । तथा निर्धारित घडी अति निकट आइपुग्यो भनी कसले तिमीहरूलाई अवगत गराउन सक्छ र?

اَللّٰهُ الَّذِيْٓ اَنْزَلَ الْكِتٰبَ بِالْحَقِّ وَ الْمِيْزَانَ ۭ وَ مَا يُدْرِيْكَ لَعَلَّ السَّاعَةَ قَرِيْبٌ ﴿١٨﴾

१९. जसले यसप्रति विश्वास गर्दैनन् तिनीहरू भने त्यो (घडी) शीघ्र आओस् भन्ने कामना गर्छन्, परन्तु विश्वासीजन भने त्यसबाट भयभीत रहन्छन्, तथा त्यो नितान्त सत्य रहेको छ भनी जान्दछन् । सावधान ! जुन व्यक्तिहरू निर्धारित घडीका सम्बन्धमा विवाद गर्छन् तिनीहरू हदसम्म विपथगामी हुन पुगेका छन् ।

يَسْتَعْجِلُ بِهَا الَّذِيْنَ لَا يُؤْمِنُوْنَ بِهَا ۚ وَ الَّذِيْنَ اٰمَنُوْا مُشْفِقُوْنَ مِنْهَا ۙ وَ يَعْلَمُوْنَ اَنَّهَا الْحَقُّ ۭ اَلَآ اِنَّ الَّذِيْنَ يُمَارُوْنَ فِي السَّاعَةِ لَفِيْ ضَلٰلٍۢ بَعِيْدٍ ﴿١٩﴾

२०. अल्लाह आफ्ना सेवकहरूप्रति अत्यन्त दयालु रहेका छन् । उनले जसलाई चाहन्छन् त्यसलाई (विस्तृत रूपमा) जीविका प्रदान गर्छन् । तथा उनी सर्वशक्तिमान, परम पराक्रमी छन् ।

اَللّٰهُ لَطِيْفٌۢ بِعِبَادِهٖ يَرْزُقُ مَنْ يَّشَآءُ ۚ وَهُوَ الْقَوِيُّ الْعَزِيْزُ ﴿٢٠﴾

२१. जसले परलोकको खेतीको कामना गर्छ, हामी त्यसको खेतीलाई त्यसका निम्ति वृद्धि गरिदिन्छौं, तथा जसले यस संसारको खेतीको कामना गर्छ, हामी त्यसलाई (त्यहींबाट) प्रदान गर्छौं । परन्तु परलोकमा त्यसलाई कुनै अंश प्राप्त हुनेछैन

مَنْ كَانَ يُرِيْدُ حَرْثَ الْاٰخِرَةِ نَزِدْ لَهٗ فِيْ حَرْثِهٖ ۚ وَمَنْ كَانَ يُرِيْدُ حَرْثَ الدُّنْيَا نُؤْتِهٖ مِنْهَا وَ مَا لَهٗ فِي الْاٰخِرَةِ مِنْ نَّصِيْبٍ ﴿٢١﴾

२२. के तिनीहरूका कुनै (यस्ता अल्लाहका) भागीदारहरू छन् जसले तिनीहरूका निम्ति धर्ममा यस्ता कुराहरू वैध तुल्याएका छन् जसको अनुमति अल्लाहले दिएका छैनन् ? तथा यदि अन्तिम निर्णयका सम्बन्धमा (हाम्रो) वचन नगुज्रेको भए तिनीहरूका बीचमा (अहिले नै) मामिलाको निर्णय गरि दिइने थियो । तथा अत्याचारीहरूलाई अवश्य नै

اَمْ لَهُمْ شُرَكٰٓؤُا شَرَعُوْا لَهُمْ مِّنَ الدِّيْنِ مَا لَمْ يَاْذَنْۢ بِهِ اللّٰهُ ۭ وَلَوْلَا كَلِمَةُ الْفَصْلِ لَقُضِيَ بَيْنَهُمْ ۭ وَاِنَّ الظّٰلِمِيْنَ لَهُمْ عَذَابٌ اَلِيْمٌ ﴿٢٢﴾

पीडादायक दण्ड मिल्नेछ ।

تَرَى الظّٰلِمِيْنَ مُشْفِقِيْنَ مِمَّا كَسَبُوْا وَهُوَ وَاقِعٌۢ بِهِمْ ۗ وَالَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ فِيْ رَوْضٰتِ الْجَنّٰتِ ۚ لَهُمْ مَّا يَشَآءُوْنَ عِنْدَ رَبِّهِمْ ۗ ذٰلِكَ هُوَ الْفَضْلُ الْكَبِيْرُ ﴿٢٢﴾

२३. अत्याचारी व्यक्तिहरूलाई तिनीहरूको आफ्नो कमाइका कारण तिमी भयभीत देख्छौ, तथा त्यो अवश्य तिनीहरूमाथि अवतीर्ण हुनेछ । परन्तु जसले विश्वास गर्छन् र पुण्य कार्य गर्छन् तिनीहरू बगैंचाको वनस्थलीमा हुनेछन् । तिनीहरूका प्रतिपालकका जुनाफमा तिनीहरूलाई मनोवाञ्छित वस्तुहरू प्राप्त हुनेछन् । यही नै (अल्लाहको) महान अनुग्रह रहेको छ ।

ذٰلِكَ الَّذِيْ يُبَشِّرُ اللّٰهُ عِبَادَهُ الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ ۗ قُلْ لَّآ اَسْـَٔلُكُمْ عَلَيْهِ اَجْرًا اِلَّا الْمَوَدَّةَ فِي الْقُرْبٰى ۗ وَمَنْ يَّقْتَرِفْ حَسَنَةً نَّزِدْ لَهٗ فِيْهَا حُسْنًا ۗ اِنَّ اللّٰهَ غَفُوْرٌ شَكُوْرٌ ﴿٢٣﴾

२४. यही त्यो वस्तु हो जसको शुभ-सन्देश अल्लाहले आफ्ना विश्वासी र पुण्यकर्म गर्ने सेवकहरूलाई दिने गर्छन् । तिमी भन, "म यसको बदलामा तिमीहरूसित कुनै प्रतिदान मागिदन, परन्तु त्यो प्रेम जुन घनिष्ठ सम्बन्धी नातेदारसित गरिन्छ ।" तथा जसले एउटा पुण्य कार्य गर्छ, हामी त्यसको पुण्यको सौन्दर्यलाई त्यसका निम्ति अझ मनमोहक बनाउँछौं । अल्लाह निश्चय नै परम क्षमाशील, परम गुणग्राही छन् ।

اَمْ يَقُوْلُوْنَ افْتَرٰى عَلَى اللّٰهِ كَذِبًا ۚ فَاِنْ يَّشَاِ اللّٰهُ يَخْتِمْ عَلٰى قَلْبِكَ ۗ وَيَمْحُ اللّٰهُ الْبَاطِلَ وَيُحِقُّ الْحَقَّ بِكَلِمٰتِهٖ ۗ اِنَّهٗ عَلِيْمٌۢ بِذَاتِ الصُّدُوْرِ ﴿٢٤﴾

२५. के तिनीहरू "त्यस व्यक्तिले अल्लाहविरुद्ध मिथ्या गढेको छ" भनी भन्छन्? यदि अल्लाहले इच्छा गरेका भए, तिम्रो हृदयमा उनले मोहर लगाउन सक्ने थिए । परन्तु अल्लाहले मिथ्यावादको मोचन गरी आफ्नो निर्देशनद्वारा सत्यको स्थापना गर्छन् । निश्चय नै, अन्तस्करणमा रहेका कुराहरूलाई उनले अति राम्ररी जान्दछन् ।

وَهُوَ الَّذِيْ يَقْبَلُ التَّوْبَةَ عَنْ عِبَادِهٖ وَيَعْفُوْا عَنِ السَّيِّاٰتِ وَيَعْلَمُ مَا تَفْعَلُوْنَ ﴿٢٥﴾

२६. तथा ती उनी नै हुन्, जसले आफ्ना सेवकहरूको प्रायश्चित स्वीकार गर्छन् र पाप क्षमा गर्छन् । तथा तिमीहरूले जुन कार्य गर्छौ उनले त्यसलाई जान्दछन् ।

وَيَسْتَجِيبُ الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ وَيَزِيدُهُم مِّن فَضْلِهِ ۚ وَالْكَافِرُونَ لَهُمْ عَذَابٌ شَدِيدٌ ﴿٢٦﴾

२७. तथा जसले विश्वास गर्छन्, र पुण्यकार्य गर्छन् उनले तिनीहरूको (प्रार्थना) स्वीकार गर्छन् र तिनीहरूलाई आफ्नो कृपाबाट अधिकभन्दा अधिक प्रदान गर्छन्, तथा अविश्वासीहरूलाई भने कठोर दण्ड मिल्नेछ ।

وَلَوْ بَسَطَ اللَّهُ الرِّزْقَ لِعِبَادِهِ لَبَغَوْا فِي الْأَرْضِ وَلَٰكِن يُنَزِّلُ بِقَدَرٍ مَّا يَشَاءُ ۚ إِنَّهُ بِعِبَادِهِ خَبِيرٌ بَصِيرٌ ﴿٢٧﴾

२८. तथा यदि अल्लाहले आफ्ना भृत्यहरूका निम्ति जीविका (का साधनहरू) अधिक विस्तृत तुल्याएका भए, तिनीहरूले पृथ्वीमा विद्रोह गर्ने थिए; परन्तु उनले आफ्नो इच्छानुसार (उचित) मात्रामा मात्र अवतीर्ण गर्ने गर्छन् । निस्सन्देह उनी आफ्ना सेवकहरूको अवस्थाप्रति पूर्ण अवगत र सर्वद्रष्टा रहेका छन् ।

وَهُوَ الَّذِي يُنَزِّلُ الْغَيْثَ مِن بَعْدِ مَا قَنَطُوا وَيَنشُرُ رَحْمَتَهُ ۚ وَهُوَ الْوَلِيُّ الْحَمِيدُ ﴿٢٨﴾

२९. तथा ती उनी नै हुन् जसले तिनीहरू निराश भएपश्चात् वर्षा बर्साउँछन् र आफ्नो करुणालाई फैलाउँछन् । तथा उनी नै संरक्षक, परम प्रशंसनीय रहेका छन् ।

وَمِنْ آيَاتِهِ خَلْقُ السَّمَاوَاتِ وَالْأَرْضِ وَمَا بَثَّ فِيهِمَا مِن دَابَّةٍ ۚ وَهُوَ عَلَىٰ جَمْعِهِمْ إِذَا يَشَاءُ قَدِيرٌ ﴿٢٩﴾

३०. तथा आकाशमण्डल र पृथ्वीको सिर्जना तथा ती दुबैमा उनले फैलाएका सम्पूर्ण जीवित प्राणीहरू उनकै चिह्नहरूमध्येका रहेका छन् । तथा जब उनले इच्छा गर्छन् ती सबैलाई एकत्रित गर्न उनी सामर्थ्यवान छन् ।

وَمَا أَصَابَكُم مِّن مُّصِيبَةٍ فَبِمَا كَسَبَتْ أَيْدِيكُمْ وَيَعْفُو عَن كَثِيرٍ ﴿٣٠﴾

३१. तथा तिमीहरूमाथि जुन सङ्कट आइलाग्छ त्यो तिमीहरूकै हातको कमाइको परिणामस्वरूप हुन्छ । तथा (तिमीहरूका) धेरैजसो (पापहरू) उनले क्षमा गर्ने गर्छन्

وَمَا أَنتُم بِمُعْجِزِينَ فِي الْأَرْضِ ۖ وَمَا لَكُم مِّن دُونِ اللَّهِ مِن وَلِيٍّ وَلَا نَصِيرٍ ﴿٣١﴾

३२. तथा पृथ्वीमा (अल्लाहको योजनालाई) तिमीहरूले असफल तुल्याउन सक्दैनौ, न त अल्लाहलाई छाडी तिमीहरूको कुनै मित्र अथवा सहयोगी नै

रहेको छ ।

३३. तथा उनका चिह्नहरूमध्ये पर्वतका शिखरहरूसदृश समुद्रमा चल्ने जहाजहरू पनि रहेका छन्

وَمِنْ اٰيٰتِهِ الْجَوَارِ فِي الْبَحْرِ كَالْاَعْلَامِ ﴿٣٢﴾

३४. यदि उनले चाहेमा हावालाई उनले स्थिर गर्न सक्छन् फलस्वरूप तिनीहरू त्यसको (समुद्रको) सतहमा अचल भएर खडा रहन पुग्नेछन्– यसमा हरेक अतिशय धैर्यधारी र कृतज्ञ व्यक्तिका निम्ति निश्चय नै चिह्नहरू विद्यमान छन्–

اِنْ يَّشَاْ يُسْكِنِ الرِّيْحَ فَيَظْلَلْنَ رَوَاكِدَ عَلٰى ظَهْرِهٖ ؕ اِنَّ فِيْ ذٰلِكَ لَاٰيٰتٍ لِّكُلِّ صَبَّارٍ شَكُوْرٍ ﴿٣٣﴾

३५. अथवा तिनीहरूको कमाइको फलस्वरूप उनले तिनीहरूलाई (मानिसलाई) विनाश गर्न सक्छन्– परन्तु (तिनीहरूका) धेरैजसो (पापहरू) उनले क्षमा गरिदिन्छन् ।

اَوْ يُوْبِقْهُنَّ بِمَا كَسَبُوْا وَ يَعْفُ عَنْ كَثِيْرٍ ﴿٣٤﴾

३६. तथा (उनले तिनीहरूलाई ध्वस्त पारे ताकि) अल्लाहका चिह्नहरूका सम्बन्धमा विवाद गर्ने व्यक्तिलाई तिनीहरूको पलायन गर्ने कुनै स्थान रहेको छैन भन्ने कुरा ज्ञात होस् ।

وَّ يَعْلَمَ الَّذِيْنَ يُجَادِلُوْنَ فِيْٓ اٰيٰتِنَا ؕ مَا لَهُمْ مِّنْ مَّحِيْصٍ ﴿٣٥﴾

३७. तथा जुन वस्तुहरू तिमीहरूलाई प्रदान गरिएका छन् ती ता यस जीवनका अस्थायी साधनहरू मात्र हुन्, परन्तु जुन व्यक्तिहरू विश्वास गर्छन् र आफ्ना प्रतिपालकमाथि पूर्ण भरोसा राख्छन् तिनीहरूका निम्ति भने अल्लाहका जुनाफमा रहेका वस्तुहरू नै अधिक उत्तम र दीर्घकालीन रहेका छन् ।

فَمَآ اُوْتِيْتُمْ مِّنْ شَيْءٍ فَمَتَاعُ الْحَيٰوةِ الدُّنْيَا ۚ وَمَا عِنْدَ اللّٰهِ خَيْرٌ وَّ اَبْقٰى لِلَّذِيْنَ اٰمَنُوْا وَعَلٰى رَبِّهِمْ يَتَوَكَّلُوْنَ ﴿٣٦﴾

३८. तथा जुन व्यक्तिहरू जघन्य पाप कार्यहरूबाट र अश्लीलताबाट जोगिएर हिंड्छन् र क्रोधित भएको खण्डमा क्षमा गर्ने गर्छन्,

وَ الَّذِيْنَ يَجْتَنِبُوْنَ كَبٰٓئِرَ الْاِثْمِ وَ الْفَوَاحِشَ وَ اِذَا مَا غَضِبُوْا هُمْ يَغْفِرُوْنَ ﴿٣٧﴾

३९. तथा जसले आफ्ना प्रतिपालकको वचन सुन्ने गर्छन् र नमाज अनुष्ठान गर्छन्, तथा आफ्ना मामिलाहरूलाई पारस्परिक सल्लाह परामर्शद्वारा (सुल्झाउने) गर्छन्, तथा हामीले प्रदान गरेका वस्तुहरूबाट तिनीहरू अल्लाहको मार्गमा खर्च गर्ने गर्छन्,

وَالَّذِينَ اسْتَجَابُوا لِرَبِّهِمْ وَأَقَامُوا الصَّلَاةَ وَأَمْرُهُمْ شُورَىٰ بَيْنَهُمْ وَمِمَّا رَزَقْنَاهُمْ يُنفِقُونَ ﴿٣٨﴾

४०. तथा ती व्यक्तिहरू जसमाथि जब कुनै अत्याचार हुन्छ, आफ्नो प्रतिरक्षा गर्छन्

وَالَّذِينَ إِذَا أَصَابَهُمُ الْبَغْيُ هُمْ يَنتَصِرُونَ ﴿٣٩﴾

४१. तथा आघातको बदला त्यही अनुरूपको आघात रहेको छ, परन्तु जसले क्षमा गर्छ तथा (त्यसको त्यस कार्यले) सुधार हुन सक्छ भने त्यसको प्रतिदान अल्लाहको जुनाफमा रहेको छ । निश्चय नै उनले अत्याचारीहरूलाई मन पराउँदैनन् ।

وَجَزَاءُ سَيِّئَةٍ سَيِّئَةٌ مِّثْلُهَا ۖ فَمَنْ عَفَا وَأَصْلَحَ فَأَجْرُهُ عَلَى اللَّهِ ۚ إِنَّهُ لَا يُحِبُّ الظَّالِمِينَ ﴿٤٠﴾

४२. परन्तु जसले आफूमाथि अत्याचार गरिएपश्चात् आफ्नो प्रतिरक्षा गर्छन्, तिनीहरूमाथि कुनै दोष लाग्नेछैन ।

وَلَمَنِ انتَصَرَ بَعْدَ ظُلْمِهِ فَأُولَٰئِكَ مَا عَلَيْهِم مِّن سَبِيلٍ ﴿٤١﴾

४३. दोष ता केवल ती व्यक्तिहरूमाथि लाग्नेछ जसले मानिसहरूमाथि अत्याचार गर्छन् तथा बिना अधिकार पृथ्वीमा सीमोल्लङ्घन गर्दै हिड्छन् । त्यस्ता व्यक्तिहरूलाई पीडादायक दण्ड मिल्नेछ ।

إِنَّمَا السَّبِيلُ عَلَى الَّذِينَ يَظْلِمُونَ النَّاسَ وَيَبْغُونَ فِي الْأَرْضِ بِغَيْرِ الْحَقِّ ۚ أُولَٰئِكَ لَهُمْ عَذَابٌ أَلِيمٌ ﴿٤٢﴾

४४. तथा जसले धैर्यधारण गर्छ र क्षमा गर्छ– त्यो कार्य अवश्य नै अति साहसयुक्त रहेको छ ।

وَلَمَن صَبَرَ وَغَفَرَ إِنَّ ذَٰلِكَ لَمِنْ عَزْمِ الْأُمُورِ ﴿٤٣﴾

४५. तथा अल्लाहले जसलाई पथभ्रष्ट घोषित गर्छन्– त्यसपछि त्यस व्यक्तिको कोही संरक्षक हुनेछैन । तथा अत्याचारीहरूलाई जब तिनीहरूले दण्ड देख्नेछन् तिमीले के भन्दै गरेको पाउनेछौ भने, "के कुनै फर्किने मार्ग रहेको छ ?"

وَمَن يُضْلِلِ اللَّهُ فَمَا لَهُ مِن وَلِيٍّ مِّن بَعْدِهِ ۗ وَتَرَى الظَّالِمِينَ لَمَّا رَأَوُا الْعَذَابَ يَقُولُونَ هَلْ إِلَىٰ مَرَدٍّ مِّن سَبِيلٍ ﴿٤٤﴾

وَتَرٰىهُمْ يُعْرَضُوْنَ عَلَيْهَا خٰشِعِيْنَ مِنَ الذُّلِّ يَنْظُرُوْنَ مِنْ طَرْفٍ خَفِيٍّ ۚ وَقَالَ الَّذِيْنَ اٰمَنُوْٓا اِنَّ الْخٰسِرِيْنَ الَّذِيْنَ خَسِرُوْٓا اَنْفُسَهُمْ وَاَهْلِيْهِمْ يَوْمَ الْقِيٰمَةِ ۗ اَلَآ اِنَّ الظّٰلِمِيْنَ فِيْ عَذَابٍ مُّقِيْمٍ ﴿٤٦﴾

४६. तथा अपमानका कारण (आफ्ना दृष्टि) झुकाएर (त्यसतर्फ) टकटकी हेरिरहेको अवस्थामा तिमीले तिनीहरूलाई त्यस (अग्निको) सामुन्ने उपस्थित गरिएको देख्नेछौ । तथा विश्वासीजनले भन्नेछन्, "जसले पुनरुत्थानका दिन आफूलाई र आफ्ना परिवारलाई विनाशमा पारे तिनीहरू नै वास्तवमा घाटाग्रस्त व्यक्तिहरू रहेका छन् ।" सनु ! अत्याचारी व्यक्तिहरूले एउटा दीर्घकालीन दण्ड भोगिरहने छन् ।

وَمَا كَانَ لَهُمْ مِّنْ اَوْلِيَآءَ يَنْصُرُوْنَهُمْ مِّنْ دُوْنِ اللّٰهِ ۗ وَمَنْ يُّضْلِلِ اللّٰهُ فَمَا لَهٗ مِنْ سَبِيْلٍ ﴿٤٧﴾

४७. तथा अल्लाहलाई छाडी तिनीहरूको सहयोग गर्ने अन्य कोही सहयोगी हुनेछैन । तथा जसलाई अल्लाहले पथभ्रष्ट घोषित गर्छन्, त्यसका निम्ति कुनै मार्ग रहेको छैन

اِسْتَجِيْبُوْا لِرَبِّكُمْ مِّنْ قَبْلِ اَنْ يَّاْتِيَ يَوْمٌ لَّا مَرَدَّ لَهٗ مِنَ اللّٰهِ ۗ مَا لَكُمْ مِّنْ مَّلْجَاٍ يَّوْمَئِذٍ وَّمَا لَكُمْ مِّنْ نَّكِيْرٍ ﴿٤٨﴾

४८. तिमीहरू त्यसदिनको आगमनअघि नै आफ्ना प्रतिपालकको कुरो सुन जुन दिनलाई अल्लाहको (आदेश) विपरित कसैले टार्न सक्नेछैन । त्यसदिन तिमीहरूका निम्ति न कुनै शरण लिने स्थान हुनेछ न त कुनै कुरालाई अस्वीकार गर्न तिमीहरूका निम्ति (सम्भव नै) हुनेछ ।

فَاِنْ اَعْرَضُوْا فَمَآ اَرْسَلْنٰكَ عَلَيْهِمْ حَفِيْظًا ۗ اِنْ عَلَيْكَ اِلَّا الْبَلٰغُ ۗ وَاِنَّآ اِذَآ اَذَقْنَا الْاِنْسَانَ مِنَّا رَحْمَةً فَرِحَ بِهَا ۚ وَاِنْ تُصِبْهُمْ سَيِّئَةٌۢ بِمَا قَدَّمَتْ اَيْدِيْهِمْ فَاِنَّ الْاِنْسَانَ كَفُوْرٌ ﴿٤٩﴾

४९. परन्तु यदि तिनीहरू विमुख भएमा, तिमीलाइ हामीले तिनीहरूप्रति संरक्षकस्वरूप पठाएका हैनौं । तिम्रो कर्तव्य ता केवल (सन्देश) पुऱ्याउनु रहेको छ । तथा साँच्चै नै जब हामी आफ्नो तर्फबाट मानिसमाथि कृपा गर्छौं, त्यसप्रति उ अति प्रसन्न हुन्छ । परन्तु तिनीहरूका हातकै कमाइका कारण जब तिनीहरूमाथि कुनै सङ्कट आइलाग्छ, तब हेर ! मानिस कृतघ्न हुन पुग्छ ।

لِلّٰهِ مُلْكُ السَّمٰوٰتِ وَالْاَرْضِ ۗ يَخْلُقُ مَا يَشَآءُ ۗ يَهَبُ لِمَنْ يَّشَآءُ اِنَاثًا وَّيَهَبُ لِمَنْ يَّشَآءُ الذُّكُوْرَ ﴿٥٠﴾

५०. आकाशमण्डल र पृथ्वीको राज्य अल्लाहकै रहेको छ । उनले जे इच्छा गर्छन् त्यही सृष्टि गर्छन् । जसलाई इच्छा गर्छन्

त्यसलाई पुत्रीहरू प्रदान गर्छन् । तथा जसलाई इच्छा गर्छन् पुत्रहरू प्रदान गर्छन्,

أَوْ يُزَوِّجُهُمْ ذُكْرَانًا وَإِنَاثًا ۖ وَيَجْعَلُ مَن يَشَاءُ عَقِيمًا ۚ إِنَّهُ عَلِيمٌ قَدِيرٌ ﴿٥٠﴾

५१. अथवा पुत्र र पुत्री मिलाएर दिन्छन्, तथा जसलाई उनले चाहन्छन् निस्सन्तान -बाँझी) तुल्याउँछन् । निश्चय नै उनी सर्वज्ञ, सर्वशक्तिमान रहेका छन् ।

وَمَا كَانَ لِبَشَرٍ أَن يُكَلِّمَهُ اللَّهُ إِلَّا وَحْيًا أَوْ مِن وَرَاءِ حِجَابٍ أَوْ يُرْسِلَ رَسُولًا فَيُوحِيَ بِإِذْنِهِ مَا يَشَاءُ ۚ إِنَّهُ عَلِيٌّ حَكِيمٌ ﴿٥١﴾

५२. कुनै मानिसका निम्ति अल्लाहले उससित वार्ता गर्नु सम्भव छैन परन्तु केवल आकाशवाणीद्वारा अथवा पर्दाको पछिल्तिरबाट अथवा आफ्नो इच्छानुसार आकाशवाणी गर्न आफ्नो सन्देशवाहक पठाएर मात्र (वार्ता गर्ने गर्छन्) । उनी निश्चय नै परम उच्च, तत्वज्ञ छन् ।

وَكَذَٰلِكَ أَوْحَيْنَا إِلَيْكَ رُوحًا مِّنْ أَمْرِنَا ۚ مَا كُنتَ تَدْرِي مَا الْكِتَابُ وَلَا الْإِيمَانُ وَلَٰكِن جَعَلْنَاهُ نُورًا نَّهْدِي بِهِ مَن نَّشَاءُ مِنْ عِبَادِنَا ۚ وَإِنَّكَ لَتَهْدِي إِلَىٰ صِرَاطٍ مُّسْتَقِيمٍ ﴿٥٢﴾

५३. तथा तिमीप्रति हामीले यसै प्रकार आफ्नो आदेशद्वारा वाणी अवतीर्ण गरेका छौं । पुस्तक के हो भन्ने कुरा तिमीलाई थाहा थिएन, न त आस्था के हो भन्ने नै । परन्तु हामीले यस (आकाशवाणी) लाई प्रकाशस्वरूप बनाएका छौं, त्यसद्वारा हामी आफ्ना सेवकहरूमध्ये जसलाई चाहन्छौं मार्ग देखाउँछौं । तथा तिमी निश्चयपूर्वक (मानवजातिलाई) सन्मार्गतर्फ मार्गप्रदर्शन गरिरहन्छौ,

صِرَاطِ اللَّهِ الَّذِي لَهُ مَا فِي السَّمَاوَاتِ وَمَا فِي الْأَرْضِ ۗ أَلَا إِلَى اللَّهِ تَصِيرُ الْأُمُورُ ﴿٥٣﴾

५४. आकाशमण्डल र पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरू जसका रहेका छन् उनै अल्लाहको मार्गतर्फ । सुन ! सम्पूर्ण वस्तुहरूको प्रत्यावर्तन अल्लाहतर्फै हुन्छ ।

سُوْرَةُ الزُّخْرُفِ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ تِسْعُوْنَ اٰيَةً وَّسَبْعَةُ رُكُوْعَاتٍ

## अल्–जुखुफ
(हिजरतअघि अवतरित)

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

२. हा मीम* ।

حٰمٓ ①

३. यस सुगम, सुस्पष्ट पुस्तकको शपथ,

وَالْكِتٰبِ الْمُبِيْنِ ②

४. हामीले यसलाई सुगम भाषायुक्त स्पष्ट कुरान बनाएका छौं ताकि तिमीहरू बुझ्न सक ।

اِنَّا جَعَلْنٰهُ قُرْاٰنًا عَرَبِيًّا لَّعَلَّكُمْ تَعْقِلُوْنَ ③

५. तथा यो पुस्तक निश्चयपूर्वक हाम्रा जुनाफमा पुस्तककी मातृस्वरूप**, महान र) तत्वज्ञानपूर्ण अवस्थामा (सुरक्षित) रहेको छ

وَاِنَّهٗ فِيْٓ اُمِّ الْكِتٰبِ لَدَيْنَا لَعَلِيٌّ حَكِيْمٌ ④

६. तिमीहरू सीमोल्लङ्घनकारी रहेका छौ भनी -तिमीहरूलाई) उपेक्षा गरी हामी यस स्मारकग्रन्थलाई तिमीहरूबाट हटाएर लैजानेछौं त?

اَفَنَضْرِبُ عَنْكُمُ الذِّكْرَ صَفْحًا اَنْ كُنْتُمْ قَوْمًا مُّسْرِفِيْنَ ⑤

७. तथा पहिलाका मानिसहरूबीच हामीले कति धेरै नबीहरू पठाएका थियौ !

وَكَمْ اَرْسَلْنَا مِنْ نَّبِيٍّ فِي الْاَوَّلِيْنَ ⑥

---

* परम प्रशंसनीय महिमाय् ।

** उम्मुल्-किताब ( اُمّ الكتٰب ) (किताबकी मातृस्वरूप) वाक्यांशले साधारणतयाः कुरानको प्रारम्भिक परिच्छेद अल्-फातिहातर्फ सङ्केत गर्छ जुन एउटा यस्तो बीजस्वरूप रहेको छ जसमा कुरानका सम्पूर्ण मौलिक शिक्षाहरू तथा गुणसम्बन्धी लक्षणहरू रहेका छन् । परन्तु यहाँ यसले त्यस ईश्वरीय (अलौकिक) पुस्तकको प्रतिलिपितर्फ सङ्केत गरेको बुझिन्छ जुन केही रूपमा अल्लाहको संरक्षणमा (अधीनमा) रहेको छ, विस्तारररूपमा त्यो मानिसद्वारा पूर्णतयाः बुझ्न असम्भव छ अर्थात् मानिसले त्यसको गहिराईलाई पूर्णरूपले जान्न सक्दैन ।

وَمَا يَأْتِيهِم مِّن نَّبِيٍّ إِلَّا كَانُوا بِهِ يَسْتَهْزِءُونَ ﴿٨﴾

८. परन्तु तिनीहरूले हरेक नबीसित ठट्टापूर्ण व्यवहार गरेका थिए ।

فَأَهْلَكْنَا أَشَدَّ مِنْهُم بَطْشًا وَمَضَىٰ مَثَلُ الْأَوَّلِينَ ﴿٩﴾

९. तथा हामीले ती यिनीहरूभन्दा पनि अधिक पकड रहेका शक्तिशाली जातिहरूलाई हामीले विनाश गरेका थियौं, तथा ती पहिलाका मानिसहरूको उदाहरण गुज्रिसकेको छ ।

وَلَئِن سَأَلْتَهُم مَّنْ خَلَقَ السَّمَاوَاتِ وَالْأَرْضَ لَيَقُولُنَّ خَلَقَهُنَّ الْعَزِيزُ الْعَلِيمُ ﴿١٠﴾

१०. "आकाशमण्डल र पृथ्वीको सिर्जना कसले गऱ्यो त?" भनी यदि तिमीले तिनीहरूलाई सोधेमा तिनीहरूले अवश्य नै के भन्नेछन् भने, "परम पराक्रमी, सर्वज्ञ (अल्लाह) ले तिनीहरूको सिर्जना गरे ।"

الَّذِي جَعَلَ لَكُمُ الْأَرْضَ مَهْدًا وَجَعَلَ لَكُمْ فِيهَا سُبُلًا لَّعَلَّكُمْ تَهْتَدُونَ ﴿١١﴾

११. (उनैले), जसले पृथ्वीलाई तिमीहरूका निम्ति विछ्यौनास्वरूप बनाएका छन्, तथा त्यहाँ– तिमीहरूका निम्ति मार्गहरू निर्माण गरेका छन्, ताकि तिमीहरू सन्मार्गको अनुसरण गर,

وَالَّذِي نَزَّلَ مِنَ السَّمَاءِ مَاءً بِقَدَرٍ فَأَنشَرْنَا بِهِ بَلْدَةً مَّيْتًا كَذَٰلِكَ تُخْرَجُونَ ﴿١٢﴾

१२. तथा आकाशबाट जसले उचित अनुपातमा पानी बर्साए, तथा हामीले त्यसद्वारा मृतभूमिलाई जीवित तुल्यायौं, त्यसै प्रकार तिमीहरूको पुनरुत्थान हुनेछ ,

وَالَّذِي خَلَقَ الْأَزْوَاجَ كُلَّهَا وَجَعَلَ لَكُم مِّنَ الْفُلْكِ وَالْأَنْعَامِ مَا تَرْكَبُونَ ﴿١٣﴾

१३. तथा उनैले सबै (वस्तुका) जोडीहरू बनाएका छन्, तथा तिमीहरूका निम्ति जहाजहरू र चौपायाहरू बनाएका छन् जसमा तिमीहरू सवार गर्छौ,

لِتَسْتَوُوا عَلَىٰ ظُهُورِهِ ثُمَّ تَذْكُرُوا نِعْمَةَ رَبِّكُمْ إِذَا اسْتَوَيْتُمْ عَلَيْهِ وَتَقُولُوا سُبْحَانَ الَّذِي سَخَّرَ لَنَا هَٰذَا وَمَا كُنَّا لَهُ مُقْرِنِينَ ﴿١٤﴾

१४. ताकि तिमीहरू तिनीहरूका पिठ्यूँमा दृढरूपमा सवार होऊ, तथा जब, तिमीहरू तिनीहरूमाथि पूर्णरूपमा बस्न पुग्छौ, तब तिमीहरू आफ्ना प्रतिपालकको अनुग्रहलाई स्मरण गर, तथा भन, "ती पवित्र छन् जसले यिनीहरूलाई हाम्रा अधीनस्थ तुल्याएका छन्, तथा हामी आफैले यिनीहरूमा कदापि जिन कस्न (अधीनस्थ

गर्न) सक्ने थिएनौं ।

وَإِنَّآ إِلَىٰ رَبِّنَا لَمُنقَلِبُونَ ﴿١٤﴾

१५. तथा हामी अवश्य आफ्ना प्रतिपालकतर्फ फर्केर जानेछौं ।"

وَجَعَلُوا۟ لَهُۥ مِنْ عِبَادِهِۦ جُزْءًا ۚ إِنَّ ٱلْإِنسَٰنَ لَكَفُورٌ مُّبِينٌ ﴿١٥﴾

१६. तथा तिनीहरूले उनका सेवकहरूमध्ये केहीलाई उनकै एउटा अङ्गस्वरूप ठानेका छन् । मानिस निस्सन्देह स्पष्ट रूपमा अकृतज्ञ रहेको छ ।

أَمِ ٱتَّخَذَ مِمَّا يَخْلُقُ بَنَاتٍ وَأَصْفَىٰكُم بِٱلْبَنِينَ ﴿١٦﴾

१७. के उनले आफ्ना सृष्टिबाट स्वयम्का निम्ति छोरीहरू चुनको छन् तथा तिमीहरूलाई भने छोराहरूद्वारा सम्मानित तुल्याएका छन्?

وَإِذَا بُشِّرَ أَحَدُهُم بِمَا ضَرَبَ لِلرَّحْمَٰنِ مَثَلًا ظَلَّ وَجْهُهُۥ مُسْوَدًّا وَهُوَ كَظِيمٌ ﴿١٧﴾

१८. तथापि जब तिनीहरूमध्ये कसैलाई त्यो कुरोसदृश कुनै कुराको खबर दिइन्छ जुन कुरोको श्रेय उसले कृपालु (अल्लाह)लाई दिन्छ, तब त्यसको मुहार कालो हुन्छ र उ शोकाकुल हुन पुग्छ ।

أَوَمَن يُنَشَّؤُا۟ فِى ٱلْحِلْيَةِ وَهُوَ فِى ٱلْخِصَامِ غَيْرُ مُبِينٍ ﴿١٨﴾

१९. (के) त्यो अलङ्कारले ढाकिएर रहने तथा विवादका समयमा स्पष्टरूपमा विवरण दिनसम्म नसक्नेलाई (तिमीहरू अल्लाहका निम्ति चयन गर्छौ)?

وَجَعَلُوا۟ ٱلْمَلَٰٓئِكَةَ ٱلَّذِينَ هُمْ عِبَٰدُ ٱلرَّحْمَٰنِ إِنَٰثًا ۚ أَشَهِدُوا۟ خَلْقَهُمْ ۚ سَتُكْتَبُ شَهَٰدَتُهُمْ وَيُسْـَٔلُونَ ﴿١٩﴾

२०. तथा कृपालु (अल्लाह) का सेवक, फरिस्ताहरू स्त्रीजाति हुन् भनी तिनीहरू भन्ने गर्छन् । के तिनीहरूले उनीहरूको सिर्जनालाई देखेका थिए? तब ता तिनीहरूको साक्षी लिंपिवद्ध राखिनेछ, तथा तिनीहरूलाई सोधिनेछ ।

وَقَالُوا۟ لَوْ شَآءَ ٱلرَّحْمَٰنُ مَا عَبَدْنَٰهُم ۗ مَّا لَهُم بِذَٰلِكَ مِنْ عِلْمٍ ۖ إِنْ هُمْ إِلَّا يَخْرُصُونَ ﴿٢٠﴾

२१. तथा तिनीहरू भन्छन् "यदि कृपालु (अल्लाह)ले चाहेका भए, हामी तिनीहरूको उपासना गर्ने थिएनौं ।" त्यसबारे तिनीहरूलाई कुनै ज्ञान प्राप्त छैन । तिनीहरू केवल अनुमानित कुराहरू गर्ने

गर्छन् ।

२२. के यसअघि तिनीहरूलाई हामीले कुनै यस्तो पुस्तक दिएका छौं, जसको तिनीहरू दलिल प्रस्तुत गरिरहेछन्?

أَمْ آتَيْنَاهُمْ كِتَابًا مِّن قَبْلِهِ فَهُم بِهِ مُسْتَمْسِكُونَ ﴿٢١﴾

२३. होइन, (अपितु) तिनीहरू भन्छन्, "हामीले आफ्ना पुर्खाहरूलाई जुन (विशेष) प्रथाका अनुयायी पाएका थियौं, हामी तिनीहरूकै अनुयायी हुन पुगेका छौं ।

بَلْ قَالُوا إِنَّا وَجَدْنَا آبَاءَنَا عَلَىٰ أُمَّةٍ وَإِنَّا عَلَىٰ آثَارِهِم مُّهْتَدُونَ ﴿٢٢﴾

२४. तथा (सदा) यसैप्रकार (हुँदै आएको छ) अर्थात्, जब जब तिमीभन्दा पहिला कुनै नगरतर्फ हामीले कुनै सतर्ककारी पठायौं, त्यहाँका धनसम्पन्न व्यक्तिहरूले के भन्ने गर्थे भने, "हामीले आफ्ना पुर्खाहरूलाई जुन (विशेष) प्रथाका अनुयायी पाएका छौं, हामी ता तिनीहरूकै अनुयायी रहनेछौं ।"

وَكَذَٰلِكَ مَا أَرْسَلْنَا مِن قَبْلِكَ فِي قَرْيَةٍ مِّن نَّذِيرٍ إِلَّا قَالَ مُتْرَفُوهَا إِنَّا وَجَدْنَا آبَاءَنَا عَلَىٰ أُمَّةٍ وَإِنَّا عَلَىٰ آثَارِهِم مُّقْتَدُونَ ﴿٢٣﴾

२५. (तिनीहरूका) सावधानकर्ताहरूले भने, "के ! जुन कुराका अनुयायी तिमीहरूले आफ्ना पुर्खालाई पाएका थियो त्यो भन्दा उत्तम मार्गदर्शन मैले तिमीहरूसमक्ष प्रस्तुत गरे तापनि?" तिनीहरूले भने, "जुन कुराका साथ तिमीहरूलाई पठाइएको छ त्यसप्रति हामी कदापि विश्वास गर्दैनौं ।"

قَالَ أَوَلَوْ جِئْتُكُم بِأَهْدَىٰ مِمَّا وَجَدتُّمْ عَلَيْهِ آبَاءَكُمْ قَالُوا إِنَّا بِمَا أُرْسِلْتُم بِهِ كَافِرُونَ ﴿٢٤﴾

२६. अतः हामीले तिनीहरूसित यथोचित प्रतिशोध लियौं । अतः हेर ! जसले नबीहरूलाई अस्वीकार गरेका थिए तिनीहरूको परिणाम कस्तो भएको थियो ।

فَانتَقَمْنَا مِنْهُمْ فَانظُرْ كَيْفَ كَانَ عَاقِبَةُ الْمُكَذِّبِينَ ﴿٢٥﴾

२७. तथा (त्यस कुराको स्मरण गर), जब इब्राहिमले आफ्ना पिता र आफ्ना मानिसहरूलाई भनेका थिए, "जसको तिमीहरू उपासना गर्छौ, निश्चयपूर्वक

وَإِذْ قَالَ إِبْرَاهِيمُ لِأَبِيهِ وَقَوْمِهِ إِنَّنِي بَرَاءٌ مِّمَّا تَعْبُدُونَ ﴿٢٦﴾

तिनीहरू मेरा निम्ति अग्राह्य रहेका छन्,

إِلَّا الَّذِي فَطَرَنِي فَإِنَّهُ سَيَهْدِينِ ﴿٢٨﴾

२८. सिवाय उनी जसले मलाई सृष्टि गरे, तथा उनले मलाई अवश्य मार्ग देखाउनेछन् ।

وَجَعَلَهَا كَلِمَةً بَاقِيَةً فِي عَقِبِهِ لَعَلَّهُمْ يَرْجِعُونَ ﴿٢٩﴾

२९. तथा उनले त्यसलाई आफ्ना भावी सन्तानमा स्मरणीय वचनस्वरूप कायम गरे, ताकि तिनीहरू (अल्लाहतर्फ) फर्किऊन् ।

بَلْ مَتَّعْتُ هَٰؤُلَاءِ وَآبَاءَهُمْ حَتَّىٰ جَاءَهُمُ الْحَقُّ وَرَسُولٌ مُبِينٌ ﴿٣٠﴾

३०. होइन, (अपितु) मैले तिनीहरूलाई र तिनीहरूका पुर्खालाई तिनीहरूसमक्ष सत्य र स्पष्टरूपमा (आफ्नो सन्देश) प्रस्तुत गर्ने सन्देशवाहकको आगमन नहुन्जेलसम्म (अस्थायी) सुखभोग प्रदान गरेका थियौं ।

وَلَمَّا جَاءَهُمُ الْحَقُّ قَالُوا هَٰذَا سِحْرٌ وَإِنَّا بِهِ كَافِرُونَ ﴿٣١﴾

३१. परन्तु जब तिनीहरूसमक्ष सत्यको आगमन भयो तिनीहरूले भने, "यो ता जादु हो, तथा यसलाई हामी अस्वीकार गर्छौं ।"

وَقَالُوا لَوْلَا نُزِّلَ هَٰذَا الْقُرْآنُ عَلَىٰ رَجُلٍ مِنَ الْقَرْيَتَيْنِ عَظِيمٍ ﴿٣٢﴾

३२. तथा तिनीहरूले भने, "यो कुरान ती दुई नगरका ठूला बडा मानिसहरूमध्ये कुनैमाथि किन अवतीर्ण गरिएन?"

أَهُمْ يَقْسِمُونَ رَحْمَتَ رَبِّكَ ۚ نَحْنُ قَسَمْنَا بَيْنَهُمْ مَعِيشَتَهُمْ فِي الْحَيَاةِ الدُّنْيَا ۚ وَرَفَعْنَا بَعْضَهُمْ فَوْقَ بَعْضٍ دَرَجَاتٍ لِيَتَّخِذَ بَعْضُهُمْ بَعْضًا سُخْرِيًّا ۗ وَرَحْمَتُ رَبِّكَ خَيْرٌ مِمَّا يَجْمَعُونَ ﴿٣٣﴾

३३. के तिनीहरू तिम्रा प्रतिपालकको करुणाको भागबण्डा गर्छन्? वस्तुतः हामी नै तिनीहरूका बीचमा तिनीहरूको सांसारिक जीवनको जीविकाको भागबण्डा गर्छौं, तथा तिनीहरूमध्ये केहीलाई हामी अन्य केहीमाथि दर्जामा उच्चता प्रदान गर्छौं, परन्तु अफसोस ! त्यसको फलस्वरूप केही अन्य व्यक्तिहरूलाई केहीले आफ्ना अधीनस्थ बनाउँछन् । तथा तिनीहरूले एकत्रित गर्ने वस्तुहरूभन्दा तिम्रा प्रतिपालकको करुणा नै उत्तम रहेको छ ।

وَلَوْلَآ اَنْ يَّكُوْنَ النَّاسُ اُمَّةً وَّاحِدَةً لَّجَعَلْنَا لِمَنْ يَّكْفُرُ بِالرَّحْمٰنِ لِبُيُوْتِهِمْ سُقُفًا مِّنْ فِضَّةٍ وَّ مَعَارِجَ عَلَيْهَا يَظْهَرُوْنَ ﴿٣٤﴾

३४. तथा (सम्पूर्ण) मानवजाति एउटै जाति (अनुरूप) हुने नरहेको भए, कृपालु (अल्लाह)प्रति अविश्वास गर्ने व्यक्तिहरूको घरको छानो र तिनीहरूले माथि चढ्ने सिँढीहरू हामी चाँदीका बनाउने थियौं,

وَ لِبُيُوْتِهِمْ اَبْوَابًا وَّ سُرُرًا عَلَيْهَا يَتَّكِـــُٔوْنَ ﴿٣٥﴾

३५. तथा तिनीहरूका घरका ढोकाहरू (चाँदीका) र तिनीहरूले ढल्केर विश्राम गर्ने पलङ्गहरूसमेत (चाँदीका बनाइदिने थियौं) ।

وَزُخْرُفًا ؕ وَاِنْ كُلُّ ذٰلِكَ لَمَّا مَتَاعُ الْحَيٰوةِ الدُّنْيَا ؕ وَالْاٰخِرَةُ عِنْدَ رَبِّكَ لِلْمُتَّقِيْنَ ﴿٣٦﴾

३६. तथा (अन्यान्य) विभूषण (का सामानहरू) पनि (सुनका बनाइदिने थियौं) । परन्तु यी सम्पूर्ण वस्तुहरू केवल सांसारिक जीवनका (अस्थायी) साधनहरू मात्र हुन् । तथा परलोक भने तिम्रा प्रतिपालकको निर्णयानुसार धर्मनिष्ठ व्यक्तिहरूका निम्ति रहेको छ ।

وَمَنْ يَّعْشُ عَنْ ذِكْرِ الرَّحْمٰنِ نُقَيِّضْ لَهٗ شَيْطٰنًا فَهُوَ لَهٗ قَرِيْنٌ ﴿٣٧﴾

३७. तथा जो व्यक्ति कृपालु अल्लाह(को) स्मरणबाट विमुख हुन्छ, त्यसका निम्ति हामी एउटा सैतान नियुक्त गर्छौं, त्यो त्यसको मित्र बन्न पुग्छ ।

وَاِنَّهُمْ لَيَصُدُّوْنَهُمْ عَنِ السَّبِيْلِ وَ يَحْسَبُوْنَ اَنَّهُمْ مُّهْتَدُوْنَ ﴿٣٨﴾

३८. तथा निश्चयपूर्वक तिनीहरू उनीहरूलाई (अल्लाहको) मार्गबाट रोक्ने गर्छन्, परन्तु तिनीहरू भने स्वयम्लाई सन्मार्ग प्राप्त ठान्छन्,

حَتّٰۤى اِذَا جَآءَنَا قَالَ يٰلَيْتَ بَيْنِيْ وَبَيْنَكَ بُعْدَ الْمَشْرِقَيْنِ فَبِئْسَ الْقَرِيْنُ ﴿٣٩﴾

३९. अतः जब त्यस्तो कुनै व्यक्ति हामीसमक्ष उपस्थित हुन्छ, उसले (आफ्नो मित्रलाई) भन्छ, "यदि तँ र मेरा बीचमा पूर्व र पश्चिमको दूरी रहेको भए !" त्यो कति निकृष्ट मित्र रहेको छ !

وَلَنْ يَّنْفَعَكُمُ الْيَوْمَ اِذْ ظَّلَمْتُمْ اَنَّكُمْ فِى الْعَذَابِ مُشْتَرِكُوْنَ ﴿٤٠﴾

४०. तिमीहरूले सीमोल्लङ्घन गरेको हुनाले तिमीहरू दण्डका सहभागी भएका छौ भन्ने कुराले तिमीहरूलाई आज कुनै लाभ पुऱ्याउनेछैन ।"

أَفَأَنتَ تُسْمِعُ الصُّمَّ أَوْ تَهْدِي الْعُمْيَ وَمَن كَانَ فِي ضَلَالٍ مُّبِينٍ ﴿٤٠﴾

४१. अत: के तिमी बहिरालाई सुन्न सक्ने बनाउन अथवा अन्धालाई तथा स्पष्टरूपमा पथभ्रष्ट भएको व्यक्तिलाई मार्ग देखाउन सक्छौ?

فَإِمَّا نَذْهَبَنَّ بِكَ فَإِنَّا مِنْهُم مُّنتَقِمُونَ ﴿٤١﴾

४२. तथा यदि तिमीलाई हामीले लगे तापनि हामी तिनीहरूसित अवश्य नै यथोचित बदला लिनेछौ,

أَوْ نُرِيَنَّكَ الَّذِي وَعَدْنَاهُمْ فَإِنَّا عَلَيْهِم مُّقْتَدِرُونَ ﴿٤٢﴾

४३. अथवा हामी तिमीलाई त्यो कुरा देखाउनेछौं जसको तिनीहरूलाई हामीले वचन दिएका छौं, किनभने तिनीहरूमाथि हामी पूर्ण सामर्थ्यवान रहेका छौं ।

فَاسْتَمْسِكْ بِالَّذِي أُوحِيَ إِلَيْكَ ۖ إِنَّكَ عَلَىٰ صِرَاطٍ مُّسْتَقِيمٍ ﴿٤٣﴾

४४. अत: जुनकुरा तिमीप्रति आकाशवाणी गरिएको छ त्यसलाई दृढतापूर्वक समात । किनभने तिमी सन्मार्गगामी रहेका छौ ।

وَإِنَّهُ لَذِكْرٌ لَّكَ وَلِقَوْمِكَ ۖ وَسَوْفَ تُسْأَلُونَ ﴿٤٤﴾

४५. तथा साँच्चै नै, यो तिम्रा निम्ति र तिम्रा मानिसहरूका निम्ति उपदेशस्वरूप रहेको छ, तथा तिमीहरूसित अवश्य सोधिनेछ ।

وَاسْأَلْ مَنْ أَرْسَلْنَا مِن قَبْلِكَ مِن رُّسُلِنَا أَجَعَلْنَا مِن دُونِ الرَّحْمَٰنِ آلِهَةً يُعْبَدُونَ ﴿٤٥﴾

४६. तथा तिमीभन्दा पहिला हामीले पठाएका ती हाम्रा सन्देशवाहकहरूसित सोध, "के हामीले कृपालु (अल्लाह)बाहेक कुनै अन्य यस्ता उपायहरू नियुक्त गरेका थियौं जसको उपासना गरिन्थ्यो?"

وَلَقَدْ أَرْسَلْنَا مُوسَىٰ بِآيَاتِنَا إِلَىٰ فِرْعَوْنَ وَمَلَئِهِ فَقَالَ إِنِّي رَسُولُ رَبِّ الْعَالَمِينَ ﴿٤٦﴾

४७. तथा हामीले मूसालाई फिरौन र उसका मुखियाहरूतर्फ आफ्ना चिह्नहरूका साथ पठाएका थियौं, तथा उनले भनेका थिए, "म साँच्चै नै सम्पूर्ण विश्वब्रह्माण्डका प्रतिपालकको एकजना सन्देशवाहक हुँ ।"

فَلَمَّا جَاءَهُم بِآيَاتِنَا إِذَا هُم مِّنْهَا يَضْحَكُونَ ﴿٤٧﴾

४८. परन्तु जब उनी तिनीहरूसमक्ष हाम्रा चिह्नहरू लिएर आए, तब हेर ! तिनीहरूले

उनीहरूको उपहास गरे ।

४९. तथा हामीले तिनीहरूलाई कुनै यस्तो चिह्न देखाएनौं जुन त्योभन्दा अघि (गुज्रे)को बहिनीस्वरूप चिह्नभन्दा ठूलो नहोस्, तथा हामीले तिनीहरूलाई दण्डद्वारा समात्यौं ताकि तिनीहरू (हामीतर्फ) फर्किऊन् ।

وَمَا نُرِيهِمْ مِّنْ اٰيَةٍ اِلَّا هِيَ اَكْبَرُ مِنْ اُخْتِهَا ۡ وَاَخَذْنٰهُمْ بِالْعَذَابِ لَعَلَّهُمْ يَرْجِعُوْنَ ﴿٤٩﴾

५०. तथा तिनीहरूले भने, "ए जादुगर, आफ्ना प्रतिपालकसित उसले तिमीसित गरेको वाचानुसार हाम्रा निम्ति प्रार्थना गर : यस प्रकार हामी अवश्य मार्गदर्शन स्वीकार गर्नेछौं ।"

وَقَالُوْا يٰۤاَيُّهَ السّٰحِرُ ادْعُ لَنَا رَبَّكَ بِمَا عَهِدَ عِنْدَكَ ۚ اِنَّنَا لَمُهْتَدُوْنَ ﴿٥٠﴾

५१. परन्तु जब हामीले तिनीहरूबाट दण्ड हटायौं, सुन ! तिनीहरूले आफ्नो वचन भङ्ग गरे ।

فَلَمَّا كَشَفْنَا عَنْهُمُ الْعَذَابَ اِذَا هُمْ يَنْكُثُوْنَ ﴿٥١﴾

५२. तथा फिरौनले आफ्ना मानिसहरूमा के घोषणा गऱ्यो भने, "हे मेरा मानिसहरू हो ! के मिश्र अधिराज्य मेरै होइन, तथा यी नदीहरू मेरै अधीनमा बगिरहेको छैनन् र? अतः के तिमीहरू देख्दैनौ र?

وَنَادٰى فِرْعَوْنُ فِيْ قَوْمِهٖ قَالَ يٰقَوْمِ اَلَيْسَ لِيْ مُلْكُ مِصْرَ وَهٰذِهِ الْاَنْهٰرُ تَجْرِيْ مِنْ تَحْتِيْ ۚ اَفَلَا تُبْصِرُوْنَ ﴿٥٢﴾

५३. होइन, (अपितु) म त्यो अयोग्य र (आफ्नो) कुरा समेत स्पष्ट रूपमा व्यक्त गर्न नसक्ने (व्यक्ति) भन्दा उत्तम रहेको छु

اَمْ اَنَا خَيْرٌ مِّنْ هٰذَا الَّذِيْ هُوَ مَهِيْنٌ ۙ وَّلَا يَكَادُ يُبِيْنُ ﴿٥٣﴾

५४. तथा त्यसलाई किन सुनका चुराहरू प्रदान गरिएनन्, अथवा क्रमबद्ध भई उससित फरिस्ताहरू किन अवतीर्ण भएनन्?"

فَلَوْلَاۤ اُلْقِيَ عَلَيْهِ اَسْوِرَةٌ مِّنْ ذَهَبٍ اَوْ جَآءَ مَعَهُ الْمَلٰٓئِكَةُ مُقْتَرِنِيْنَ ﴿٥٤﴾

५५. यस प्रकार उसले आफ्ना मानिसहरूलाई बहकायो र तिनीहरूले उसको अनुसरण गरे । निःस्सन्देह तिनीहरू दुराचारी व्यक्तिहरू थिए ।

فَاسْتَخَفَّ قَوْمَهٗ فَاَطَاعُوْهُ ۚ اِنَّهُمْ كَانُوْا قَوْمًا فٰسِقِيْنَ ﴿٥٥﴾

फَلَمَّآ اٰسَفُوْنَا انْتَقَمْنَا مِنْهُمْ فَاَغْرَقْنٰهُمْ اَجْمَعِيْنَ ۝٥٦

५६. अतः, जब तिनीहरूले हाम्रो क्रोध बढाए, हामीले तिनीहरूसित प्रतिशोध लियौं, तथा तिनीहरू सबैलाई डुबायौं ।

فَجَعَلْنٰهُمْ سَلَفًا وَّمَثَلًا لِّلْاٰخِرِيْنَ ۝٥٧

५७. तथा हामीले तिनीहरूलाई एउटा पूर्व दृष्टान्त र भावी सन्ततिका निम्ति उदाहरणस्वरूप बनायौं ।

وَلَمَّا ضُرِبَ ابْنُ مَرْيَمَ مَثَلًا اِذَا قَوْمُكَ مِنْهُ يَصِدُّوْنَ ۝٥٨

५८. तथा जब मरियमपुत्रको उदाहरणस्वरूप उल्लेख गरिन्छ, तब हेर ! तिम्रा मानिसहरू त्यसप्रति हो-हल्ला गर्न लाग्छन्;

وَقَالُوْٓا ءَاٰلِهَتُنَا خَيْرٌ اَمْ هُوَ ؕ مَا ضَرَبُوْهُ لَكَ اِلَّا جَدَلًا ؕ بَلْ هُمْ قَوْمٌ خَصِمُوْنَ ۝٥٩

५९. तथा तिनीहरू भन्छन्, "हाम्रा उपास्यहरू उत्तम रहेका छन् अथवा उनी?" तिनीहरू त्यस कुराको उल्लेख तिमीसमक्ष केवल विवाद खडा गर्ने उद्देश्यले गर्छन् । होइन, अपितु तिनीहरू केवल कलहप्रिय व्यक्तिहरू हुन् ।

اِنْ هُوَ اِلَّا عَبْدٌ اَنْعَمْنَا عَلَيْهِ وَجَعَلْنٰهُ مَثَلًا لِّبَنِيْٓ اِسْرَآءِيْلَ ۝٦٠

६०. उनी ता केवल हाम्रा एकजना यस्ता भृत्य थिए जसलाई हामीले पुरस्कृत गरेका थियौं, तथा हामीले उनलाई इजरायलका सन्तानका निम्ति एउटा उदाहरण(स्वरूप) बनाएका थियौं ।

وَلَوْ نَشَآءُ لَجَعَلْنَا مِنْكُمْ مَّلٰٓئِكَةً فِي الْاَرْضِ يَخْلُفُوْنَ ۝٦١

६१. तथा यदि हामीले चाहेका भए, तिमीहरूमध्येबाट केहीलाई फरिस्ता बनाउन सक्ने थियौं जो पृथ्वीका उत्तराधिकारी हुने थिए ।

وَاِنَّهٗ لَعِلْمٌ لِّلسَّاعَةِ فَلَا تَمْتَرُنَّ بِهَا وَاتَّبِعُوْنِ ؕ هٰذَا صِرَاطٌ مُّسْتَقِيْمٌ ۝٦٢

६२. परन्तु वस्तुतः, उनी निर्धारित घडी*का (समयका) चिह्न (स्वरूप) रहेका

* अस्साअः ( الساعة ) शब्दको शाब्दिकरूपमा गरिएको अनुवाद 'त्यो निर्धारित घडी'लाई (परिच्छेदः ५४:२) सूरः अल् कमरमा प्रयोग भएको त्यही भावार्थको प्रकाशमा बुझ्न सकिन्छ । पवित्र नबी मुहम्मद (उनीप्रति शान्ति होस्) को आगमनका साथै जुन क्रान्तिकारी परिवर्तनहरू ल्याइने निर्णय भएको थियो, तिनीहरूकै उल्लेख

छन् । अतः त्यसबारे कुनै सन्देह नगर, अपितु मेरो अनुसरण गर । यही नै सन्मार्ग रहेको छ ।

وَلَا يَصُدَّنَّكُمُ الشَّيْطٰنُ ۚ اِنَّهٗ لَكُمْ عَدُوٌّ مُّبِيْنٌ ﴿٦٢﴾

६२. तथा सैतानले तिमीहरूलाई बाधा नपुऱ्याओस् । निश्चयपूर्वक त्यो तिमीहरूको खुल्लम खुल्ला शत्रु रहेको छ ।

وَلَمَّا جَآءَ عِيْسٰى بِالْبَيِّنٰتِ قَالَ قَدْ جِئْتُكُمْ بِالْحِكْمَةِ وَلِاُبَيِّنَ لَكُمْ بَعْضَ الَّذِيْ تَخْتَلِفُوْنَ فِيْهِ ۚ فَاتَّقُوا اللّٰهَ وَاَطِيْعُوْنِ ﴿٦٣﴾

६४. तथा जब येशु (ईसा) तिनीहरूसमक्ष स्पष्ट प्रमाणहरू लिएर आए, उनले भने, "निःस्सन्देह म तिमीहरूसमक्ष ज्ञान लिएर, तथा तिमीहरूले परस्पर मतभेद राख्ने गरेका केही कुराहरूलाई तिमीहरूप्रति स्पष्ट गर्नका निम्ति आएको हुँ । अतः तिमीहरू अल्लाहसित डराऊ र मेरो अनुसरण गर ।

اِنَّ اللّٰهَ هُوَ رَبِّيْ وَرَبُّكُمْ فَاعْبُدُوْهُ ۚ هٰذَا صِرَاطٌ مُّسْتَقِيْمٌ ﴿٦٥﴾

६५. वस्तुतः अल्लाह– उनी नै मेरा तथा तिमीहरूका पनि प्रतिपालक हुन् । त्यसकारण उनकै उपासना गर । यही नै सन्मार्ग रहेको छ ।"

فَاخْتَلَفَ الْاَحْزَابُ مِنْۢ بَيْنِهِمْ ۚ فَوَيْلٌ لِّلَّذِيْنَ ظَلَمُوْا مِنْ عَذَابِ يَوْمٍ اَلِيْمٍ ﴿٦٦﴾

६६. परन्तु विभिन्न समूहहरू परस्पर मतभेद गर्न लागे । अतः अत्याचारीहरूका निम्ति एउटा कष्टदायक दिनको दण्डद्वारा विनाश (निर्धारित) रहेको छ ।

هَلْ يَنْظُرُوْنَ اِلَّا السَّاعَةَ اَنْ تَأْتِيَهُمْ بَغْتَةً وَّهُمْ لَا يَشْعُرُوْنَ ﴿٦٧﴾

६७. तिनीहरू केवल आफूमाथि अकस्मात आइलाग्ने त्यस निर्धारित घडीको प्रतीक्षामा रहेका छन्, परन्तु (त्यसको) बोध भने तिनीहरूलाई छैन ।

---

यहाँ (الساعة)स्वरूप भएको छ । तथा जुन आध्यात्मिक क्रान्ति हुन लागेको थियो त्यसैको समर्थनको प्रमाणस्वरूप चन्द्रमालाई दुई टुक्रा पारेर देखाइएको थियो । उक्त अध्ययनअन्तर्गतको आयतमा प्रयोग भएको त्यस प्रकारको गूढार्थ जसले ईसातर्फ सङ्केत गर्छ त्यसलाई त्यही मार्गबाट बुझ्न सकिन्छ ।अतः 'निर्धारित समय वा घडी' ले भविष्यमा ईसा (येशु) को आगमन तथा त्यसका साथसाथै हुने आध्यात्मिक क्रान्तितर्फ सङ्केत गर्छ ।

६८. धर्मनिष्ठ व्यक्तिहरूबाहेक त्यसदिन कतिपय मित्रहरू परस्पर एक-अर्काका शत्रु बन्न पुग्नेछन् ।

الْأَخِلَّاءُ يَوْمَئِذٍ بَعْضُهُمْ لِبَعْضٍ عَدُوٌّ إِلَّا الْمُتَّقِينَ ﴿٦٧﴾

६९. "हे मेरा सेवकहरू हो, आज तिमीहरूले डराउनु पर्नेछैन, न त तिमीहरू शोकग्रस्त नै हुनेछौ;

يَا عِبَادِ لَا خَوْفٌ عَلَيْكُمُ الْيَوْمَ وَلَا أَنتُمْ تَحْزَنُونَ ﴿٦٨﴾

७०. ती व्यक्तिहरू, जसले हाम्रा निर्देशनहरूप्रति विश्वास गरेका थिए र आज्ञाकारी बनेका थिए,

الَّذِينَ آمَنُوا بِآيَاتِنَا وَكَانُوا مُسْلِمِينَ ﴿٦٩﴾

७१. "तिमीहरू बगैँचामा प्रवेश गर, तिमीहरू र तिमीहरूका पत्नीहरूलाई सम्मानित र आनन्दित तुल्याइनेछ ।"

ادْخُلُوا الْجَنَّةَ أَنتُمْ وَأَزْوَاجُكُمْ تُحْبَرُونَ ﴿٧٠﴾

७२. तिनीहरूसमक्ष बारम्बार सुनका भोजनपात्र र प्यालाहरू ल्याइनेछ, तथा त्यहाँ आत्माले चाहेका सम्पूर्ण वस्तुहरू र नेत्रले रुचाउने कुराहरू प्राप्त हुनेछन् । "तथा तिमीहरू त्यहाँ सदा रहनेछौ ।"

يُطَافُ عَلَيْهِم بِصِحَافٍ مِّن ذَهَبٍ وَأَكْوَابٍ ۖ وَفِيهَا مَا تَشْتَهِيهِ الْأَنفُسُ وَتَلَذُّ الْأَعْيُنُ ۖ وَأَنتُمْ فِيهَا خَالِدُونَ ﴿٧١﴾

७३. तथा त्यही नै त्यो बगैँचा हो जसको तिमीहरूले गर्ने गरेका कार्यहरूको फलस्वरूप तिमीहरूलाई उत्तराधिकारी बनाइएको छ ।

وَتِلْكَ الْجَنَّةُ الَّتِي أُورِثْتُمُوهَا بِمَا كُنتُمْ تَعْمَلُونَ ﴿٧٢﴾

७४. त्यहाँ तिमीहरूका निम्ति पर्याप्तरूपमा फल रहेको छ, जसलाई तिमीहरू खानेछौ ।"

لَكُمْ فِيهَا فَاكِهَةٌ كَثِيرَةٌ مِّنْهَا تَأْكُلُونَ ﴿٧٣﴾

७५. अपराधीहरू अवश्य दीर्घकालसम्म नर्कको दण्ड भोग्नेछन् ।

إِنَّ الْمُجْرِمِينَ فِي عَذَابِ جَهَنَّمَ خَالِدُونَ ﴿٧٤﴾

७६. तिनीहरूबाट त्यसलाई हलुका गरिने छैन, र तिनीहरू त्यहाँ पूर्णरूपले निराश हुन पुग्नेछन् ।

لَا يُفَتَّرُ عَنْهُمْ وَهُمْ فِيهِ مُبْلِسُونَ ﴿٧٥﴾

७७. त्या तिनीहरूमाथि हामीले अत्याचार

وَمَا ظَلَمْنَاهُمْ وَلَٰكِن كَانُوا هُمُ الظَّالِمِينَ ﴿٧٦﴾

गरेनौं, अपितु तिनीहरू स्वयम् अत्याचारी व्यक्तिहरू थिए ।

وَنَادَوْا يَا مَالِكُ لِيَقْضِ عَلَيْنَا رَبُّكَ ؕ قَالَ إِنَّكُم مَّاكِثُونَ ﴿٧٧﴾

७८. तथा तिनीहरू (के भन्दै) चिच्याउने छन् (भन्) "हे (नर्कका) रक्षक ! तिम्रा प्रतिपालकले हामीलाई समाप्त गरिदिउन् ।" उनले भन्नेछन्, "तिमीहरू (अवश्य त्यहाँ नै) रहिरहनेछौ ।;"

لَقَدْ جِئْنَاكُم بِالْحَقِّ وَلَٰكِنَّ أَكْثَرَكُمْ لِلْحَقِّ كَارِهُونَ ﴿٧٨﴾

७९. (अल्लाहले भन्नेछन्) "हामीले तिमीहरूसमक्ष सत्य प्रस्तुत गरेका थियौ; परन्तु तिमीहरूमध्ये अधिकतरले सत्यलाई घृणा गर्नेगथ्यौ ।"

أَمْ أَبْرَمُوا أَمْرًا فَإِنَّا مُبْرِمُونَ ﴿٧٩﴾

८०. के तिनीहरूले कुनै कार्यक्रम निश्चित गरेका छन्? त्यसो भए हामीले (पनि) निश्चित गरेका छौं

أَمْ يَحْسَبُونَ أَنَّا لَا نَسْمَعُ سِرَّهُمْ وَنَجْوَاهُم ۚ بَلَىٰ وَرُسُلُنَا لَدَيْهِمْ يَكْتُبُونَ ﴿٨٠﴾

८१. के तिनीहरूका गुप्त कुराहरू तथा तिनीहरूका गोपनीय सल्लाहहरू हामी सुन्दैनौं भनी तिनीहरू ठान्छन्? हो ! तथा हाम्रा दूतहरू तिनीहरूसितै रही (हरेक कुराहरू) लिपिवद्ध गर्ने गर्छन् ।

قُلْ إِن كَانَ لِلرَّحْمَٰنِ وَلَدٌ فَأَنَا أَوَّلُ الْعَابِدِينَ ﴿٨١﴾

८२. तिमी भन, "यदि कृपालु (अल्लाह)को कुनै पुत्र रहेको भए, म त्यसको सर्वप्रथम उपासना गर्ने थिएँ ।"

سُبْحَانَ رَبِّ السَّمَاوَاتِ وَالْأَرْضِ رَبِّ الْعَرْشِ عَمَّا يَصِفُونَ ﴿٨٢﴾

८३. आकाशमण्डल र पृथ्वीका तथा परम सिंहासनका स्वामी (अल्लाह) पवित्र छन, (तथा) तिनीहरूले (उनका सम्बन्धमा) गढने गरेका सम्पूर्ण कुराहरूबाट (उनी पूर्ण रूपमा स्वच्छ रहेका छन्) ।

فَذَرْهُمْ يَخُوضُوا وَيَلْعَبُوا حَتَّىٰ يُلَاقُوا يَوْمَهُمُ الَّذِي يُوعَدُونَ ﴿٨٣﴾

८४. अत: तिनीहरूसित बाचा गरिएको तिनीहरूको त्यस दिनलाई तिनीहरूले नभेटुन्जेलसम्म तिनीहरूलाई व्यर्थ कुराहरूमा व्यस्त रहन र परस्पर क्रीडा-

मनोरञ्जन गर्न छाडिदेउ ।

وَهُوَ الَّذِي فِي السَّمَاءِ إِلَٰهٌ وَفِي الْأَرْضِ إِلَٰهٌ ۚ وَهُوَ الْحَكِيمُ الْعَلِيمُ ﴿٨٤﴾

८५. तथा ती उनी नै हुन् जो आकाशमण्डलमा उपास्य रहेका छन् र पृथ्वीमा -पनि एकमात्र) उपास्य रहेका छन्,; तथा उनी परम तत्वज्ञ, सर्वज्ञ छन् ।

وَتَبَارَكَ الَّذِي لَهُ مُلْكُ السَّمَاوَاتِ وَالْأَرْضِ وَمَا بَيْنَهُمَا وَعِنْدَهُ عِلْمُ السَّاعَةِ وَإِلَيْهِ تُرْجَعُونَ ﴿٨٥﴾

८६. तथा आकाशमण्डल र पृथ्वी तथा ती दुबैका बीचमा रहेका सम्पूर्ण वस्तुहरूमाथि जसको शासन रहेको छ ती अति नै मङ्गलमय रहेका छन्, तथा निर्धारित घडीको ज्ञान केवल उनैलाई प्राप्त छ, तथा उनीतर्फै तिमीहरूलाई फर्काएर लगिनेछ ।

وَلَا يَمْلِكُ الَّذِينَ يَدْعُونَ مِنْ دُونِهِ الشَّفَاعَةَ إِلَّا مَنْ شَهِدَ بِالْحَقِّ وَهُمْ يَعْلَمُونَ ﴿٨٦﴾

८७. तथा उनलाई छाडी तिनीहरू जसलाई पुकार्छन् तिनीहरूमा मध्यस्थताको सामर्थ्य रहेको छैन, परन्तु जसले सत्यको साक्षी दिन्छ, तथा तिनीहरूले (उनलाई) जान्दछन् ।

وَلَئِنْ سَأَلْتَهُمْ مَنْ خَلَقَهُمْ لَيَقُولُنَّ اللَّهُ ۖ فَأَنَّىٰ يُؤْفَكُونَ ﴿٨٧﴾

८८. तथा "तिनीहरूलाई कसले सृष्टि गऱ्यो?" भनी यदि तिमीले तिनीहरूलाई सोधेमा, तिनीहरूले निश्चय नै के उत्तर दिनेछन् भने, "अल्लाहले" । अतः तिनीहरूलाई कसरी विमुख तुल्याइ राखिएको छ त?

وَقِيلِهِ يَا رَبِّ إِنَّ هَٰؤُلَاءِ قَوْمٌ لَا يُؤْمِنُونَ ﴿٨٨﴾

८९. (म) उनको (बारम्बार के भन्ने) पुकारको शपथ (खान्छु भने), "हे मेरा प्रतिपालक ! " यिनीहरू यस्ता मानिसहरू हुन् जसले -कदापि) विश्वास स्थापना गर्नेछैनन् ।

فَاصْفَحْ عَنْهُمْ وَقُلْ سَلَامٌ ۚ فَسَوْفَ يَعْلَمُونَ ﴿٨٩﴾

९०. अतः, तिनीहरूबाट अलग्ग रहने गर र भन, 'शान्ति,' तथा अति शीघ्र तिनीहरूले जान्नेछन् ।

سُوْرَةُ الدُّخَانِ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ سِتُّوْنَ اٰيَةً وَّثَلٰثَةُ رُكُوْعَاتٍ

## अल्-दुखान

(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

حٰمٓ ②

२. हा मीम* ।

وَالْكِتٰبِ الْمُبِيْنِ ③

३. यस स्पष्टवक्ता पुस्तकको शपथ ।

اِنَّآ اَنْزَلْنٰهُ فِيْ لَيْلَةٍ مُّبٰرَكَةٍ اِنَّا كُنَّا مُنْذِرِيْنَ ④

४. साँच्चै नै, हामीले यसलाई एउटा मङ्गलमय रात्रिमा अवतीर्ण गरेका छौं । निस्सन्देह, (दुष्कार्यविरुद्ध) हामी (सदा) सावधान गर्दै आएका छौं ।

فِيْهَا يُفْرَقُ كُلُّ اَمْرٍ حَكِيْمٍ ⑤

५. यसमा सम्पूर्ण ज्ञानका कुराहरूको निर्णय गरिन्छ,

اَمْرًا مِّنْ عِنْدِنَا ۚ اِنَّا كُنَّا مُرْسِلِيْنَ ⑥

६. हाम्रो (आफ्नै) आदेशद्वारा । वस्तुतः हामी सदा (सन्देशवाहकहरू) पठाउँदै आएका छौं,

رَحْمَةً مِّنْ رَّبِّكَ ۚ اِنَّهٗ هُوَ السَّمِيْعُ الْعَلِيْمُ ⑦

७. तिम्रा प्रतिपालकको तर्फबाट करुणास्वरूप । वस्तुतः उनी नै सर्वस्रोता, सर्वज्ञ छन्,

رَبِّ السَّمٰوٰتِ وَالْاَرْضِ وَمَا بَيْنَهُمَا ۘ اِنْ كُنْتُمْ مُّوْقِنِيْنَ ⑧

८. आकाशमण्डल र पृथ्वी तथा ती दुबैका बीचमा रहेका सम्पूर्ण वस्तुहरूका स्वामी, यदि (केवल) तिमीहरू विश्वास गर्थ्यौ भने ।

لَآ اِلٰهَ اِلَّا هُوَ يُحْيٖ وَيُمِيْتُ ۚ رَبُّكُمْ وَرَبُّ اٰبَآئِكُمُ الْاَوَّلِيْنَ ⑨

९. उनीबाहेक अन्य कोही उपास्य छैन । उनी जीवन दान गर्छन् तथा उनी नै मृत्यु प्रदान गर्छन् । उनी नै तिमीहरूका र तिमीहरूका पुर्खाहरूका (पनि) प्रतिपालक

* परम प्रशंसनीय, महिमामय ।

हुन् ।

بَلْ هُمْ فِيْ شَكٍّ يَّلْعَبُوْنَ ⑩

१०. तथापि तिनीहरू सन्देहग्रस्त रही कीडा गर्ने गर्छन् ।

فَارْتَقِبْ يَوْمَ تَاْتِي السَّمَآءُ بِدُخَانٍ مُّبِيْنٍ ⑪

११. परन्तु तिमी त्यस दिनको प्रतीक्षा गर जब आकाशले स्पष्टरूपमा देखिने धुँवा प्रकट गर्नेछ,

يَّغْشَى النَّاسَ ؕ هٰذَا عَذَابٌ اَلِيْمٌ ⑫

१२. त्यसले सम्पूर्ण मानिसहरूलाई ढाक्नेछ । त्यो एउटा पीडादायक सजाय हुनेछ ।

رَبَّنَا اكْشِفْ عَنَّا الْعَذَابَ اِنَّا مُؤْمِنُوْنَ ⑬

१३. (तब मानिसहरू के भन्दै चिच्याउने छन् भने), "हे हाम्रा प्रतिपालक, यो सजाय हामीबाट निवारण गर, साँच्चै नै, हामी विश्वास गर्छौं ।"

اَنّٰى لَهُمُ الذِّكْرٰى وَقَدْ جَآءَهُمْ رَسُوْلٌ مُّبِيْنٌ ⑭

१४. जब तिनीहरूसमक्ष सम्पूर्ण कुराहरू स्पष्टरूपमा वर्णन गर्ने सन्देशवाहकको आगमन भइसकेको छ भने, तिनीहरूले अब कसरी उपदेशबाट लाभ उठाउन सक्छन् र?

ثُمَّ تَوَلَّوْا عَنْهُ وَ قَالُوْا مُعَلَّمٌ مَّجْنُوْنٌ ⑮

१५. तथा त्यससमय तिनीहरू उनीबाट विमुख भएका थिए तथा भन्ने गर्थे, "यो ता (कसैद्वारा) पढाइएको पागल व्यक्ति हो ।"

اِنَّا كَاشِفُوا الْعَذَابِ قَلِيْلًا اِنَّكُمْ عَآئِدُوْنَ ⑯

१६. केही समयका निम्ति हामी दण्ड स्थगित गरिदिनेछौं, (परन्तु) तिमीहरू निश्चयपूर्वक पुनः (अविश्वासतर्फ) फर्कनेछौ

يَوْمَ نَبْطِشُ الْبَطْشَةَ الْكُبْرٰى ۚ اِنَّا مُنْتَقِمُوْنَ ⑰

१७. त्यसदिन जब हामी (तिमीहरूलाई) ठूलो सहसा हुने आक्रमणद्वारा समात्नेछौं तब हामी अवश्य यथोचित बदला लिनेछौं ।

وَلَقَدْ فَتَنَّا قَبْلَهُمْ قَوْمَ فِرْعَوْنَ وَ جَآءَهُمْ رَسُوْلٌ كَرِيْمٌ ⑱

१८. तथा तिनीहरूभन्दा पहिला हामीले फिरौनका मानिसहरूको परीक्षा लिएका थियौं, तथा तिनीहरूसमक्ष एकजना महान

सन्देशवाहक आएका थिए,

أَنْ أَدُّوا إِلَيَّ عِبَادَ اللَّهِ ۖ إِنِّي لَكُمْ رَسُولٌ أَمِينٌ ﴿١٨﴾

१९. (उनले के भनेका थिए भने), "अल्लाहका सेवकहरूलाई मेरा हातमा हस्तान्तरण गर । साँच्चै नै म तिमीहरूतर्फ एकजना (आफ्नो) कर्तव्यप्रति निष्ठावान सन्देशवाहकस्वरूप पठाइएको हुँ ।

وَأَنْ لَا تَعْلُوا عَلَى اللَّهِ ۖ إِنِّي آتِيكُمْ بِسُلْطَانٍ مُبِينٍ ﴿١٩﴾

२०. तथा अल्लाहको विरोधमा आफूलाई हठधर्मपूर्वक खडा नगर । म तिमीहरूसमक्ष निश्चयपूर्वक एउटा स्पष्ट प्रमाणका साथ आएको छु ।

وَإِنِّي عُذْتُ بِرَبِّي وَرَبِّكُمْ أَنْ تَرْجُمُونِ ﴿٢٠﴾

२१. "तथा तिमीहरूले ममाथि ढुङ्गा प्रहार गरौला भनी म मेरा र तिमीहरूका प्रतिपालकसित शरणयाचना गर्छु ।

وَإِنْ لَمْ تُؤْمِنُوا لِي فَاعْتَزِلُونِ ﴿٢١﴾

२२. तथा यदि तिमीहरू मप्रति विश्वास गर्दैनौ भने मबाट अलग्ग भएर रहने गर ।"

فَدَعَا رَبَّهُ أَنَّ هَٰؤُلَاءِ قَوْمٌ مُجْرِمُونَ ﴿٢٢﴾

२३. त्यसपछि उनले आफ्ना प्रतिपालकसित (के भन्दै) प्रार्थना गरे (भने), "यिनीहरू निस्सन्देह पापी व्यक्तिहरू रहेका छन् ।"

فَأَسْرِ بِعِبَادِي لَيْلًا إِنَّكُمْ مُتَّبَعُونَ ﴿٢٣﴾

२४. (अल्लाहले भने), "रात्रि समयमा मेरा सेवकहरूलाई लिएर निस्क, किनभने तिमीहरूलाई पछ्याइने कुरा पक्का छ ।

وَاتْرُكِ الْبَحْرَ رَهْوًا ۖ إِنَّهُمْ جُنْدٌ مُغْرَقُونَ ﴿٢٤﴾

२५. तथा समद्रलाई शान्त (रहेको अवस्थामा) पछि छाड । तिनीहरू यस्ता लस्करहरू हुन् जसका निम्ति डुब्नु निश्चित भइसकेको छ ।"

كَمْ تَرَكُوا مِنْ جَنَّاتٍ وَعُيُونٍ ﴿٢٥﴾

२६. कति नै बगैंचाहरू र पानीका मूलहरू तिनीहरूले पछाडि छाडेर गए !

وَزُرُوعٍ وَمَقَامٍ كَرِيمٍ ﴿٢٦﴾

२७. तथा ती अन्नका खेतहरू र उत्कृष्ट स्थानहरू !

وَّنَعْمَةٍ كَانُوْا فِيْهَا فٰكِهِيْنَ ﴿٢٨﴾

२८. तथा आरामदायक विश्रामालयहरू, जहाँ तिनीहरू आनन्द अनुभव गर्ने गर्थे !

كَذٰلِكَ وَاَوْرَثْنٰهَا قَوْمًا اٰخَرِيْنَ ﴿٢٩﴾

२९. त्यसै प्रकार (त्यो घटना घटेको थियो) । तथा हामीले अन्य जाति (का मानिसहरूलाई) ती वस्तुहरूका उत्तराधिकारी बनायौं ।

فَمَا بَكَتْ عَلَيْهِمُ السَّمَآءُ وَالْاَرْضُ وَمَا كَانُوْا مُنْظَرِيْنَ ﴿٣٠﴾

३०. तथा आकाशमण्डल र पृथ्वी तिनीहरूका निम्ति रोएनन्, न त तिनीहरूलाई कुनै अवसर प्रदान गरियो ।

وَلَقَدْ نَجَّيْنَا بَنِيْٓ اِسْرَآءِيْلَ مِنَ الْعَذَابِ الْمُهِيْنِ ﴿٣١﴾

३१. तथा हामीले इजरायलका सन्तानलाई अपमानजनक दण्डबाट मुक्ति प्रदान गऱ्यौं ।

مِنْ فِرْعَوْنَ ؕ اِنَّهٗ كَانَ عَالِيًا مِّنَ الْمُسْرِفِيْنَ ﴿٣٢﴾

३२. (जुन) फिरौनद्वारा -दिइएको थियो) त्यो अति दाम्भिक सीमोल्लङ्घनकारीहरूमध्ये एक (व्यक्ति) थियो ।

وَلَقَدِ اخْتَرْنٰهُمْ عَلٰى عِلْمٍ عَلَى الْعٰلَمِيْنَ ﴿٣٣﴾

३३. तथा हामीले जानीबुझी तिनीहरूलाई (समकालीन) जातिहरूमध्ये(बाट) निर्वाचित गरेका थियौं ।

وَاٰتَيْنٰهُمْ مِّنَ الْاٰيٰتِ مَا فِيْهِ بَلٰٓؤٌا مُّبِيْنٌ ﴿٣٤﴾

३४. तथा हामीले तिनीहरूलाई केही यस्ता चिह्नहरू प्रदान गरेका थियौं जसमा स्पष्ट परीक्षा(निहित) थियो ।

اِنَّ هٰٓؤُلَآءِ لَيَقُوْلُوْنَ ﴿٣٥﴾

३५. यी (मानिसहरू के) भन्ने गर्छन् (भने) :

اِنْ هِيَ اِلَّا مَوْتَتُنَا الْاُوْلٰى وَمَا نَحْنُ بِمُنْشَرِيْنَ ﴿٣٦﴾

३६. "यो हाम्रो पहिलो (र एकमात्र) मृत्यु रहेको छ, (त्यसपछि कुनै जीवन रहेको छैन) तथा हाम्रो पुर्नरुत्थान हुनेछैन ।

فَاْتُوْا بِاٰبَآئِنَآ اِنْ كُنْتُمْ صٰدِقِيْنَ ﴿٣٧﴾

३७. अत: यदि तिमीहरूको कुरो साँचो हो भने हाम्रा पितृहरूलाई (फर्काएर) ल्याऊ ।"

اَهُمْ خَيْرٌ اَمْ قَوْمُ تُبَّعٍ ۙ وَّالَّذِيْنَ مِنْ قَبْلِهِمْ ؕ اَهْلَكْنٰهُمْ ز اِنَّهُمْ كَانُوْا مُجْرِمِيْنَ ﴿٣٨﴾

३८. के तिनीहरू उत्तम रहेका छन् अथवा तुब्बा जाति तथा तिनीहरूभन्दा पहिलाका

मानिसहरू? हामीले तिनीहरूलाई विनाश गऱ्यौं, कारण तिनीहरू पापी व्यक्तिहरू थिए

وَمَا خَلَقْنَا السَّمٰوٰتِ وَالْاَرْضَ وَمَا بَيْنَهُمَا لٰعِبِيْنَ ﴿٣٨﴾

३९. तथा आकाशमण्डल र पृथ्वी तथा ती दुबैका बीचमा रहेका सम्पूर्ण वस्तुहरू हामीले कीडास्वरूप सृष्टि गरेका होइनौं ।

مَا خَلَقْنٰهُمَآ اِلَّا بِالْحَقِّ وَلٰكِنَّ اَكْثَرَهُمْ لَا يَعْلَمُوْنَ ﴿٣٩﴾

४०. तथा हामीले तिनीहरूलाई केवल सत्य (र न्याय) को आवश्यकताअनुसार नै सृष्टि गरेका थियौं, परन्तु तिनीहरूमध्ये अधिकतरले बुभ्दैनन् ।

اِنَّ يَوْمَ الْفَصْلِ مِيْقَاتُهُمْ اَجْمَعِيْنَ ﴿٤٠﴾

४१. निस्सन्देह, निर्णयको दिन नै तिनीहरू सबैको निर्धारित समय रहेको छ,

يَوْمَ لَا يُغْنِيْ مَوْلًى عَنْ مَّوْلًى شَيْـًٔا وَّلَا هُمْ يُنْصَرُوْنَ ﴿٤١﴾

४२. त्यस दिन कुनै मित्रले कुनै मित्रलाई लाभ पुऱ्याउन सक्नेछैन, न त तिनीहरूको सहयोग नै गरिनेछ,

اِلَّا مَنْ رَّحِمَ اللّٰهُ ۭ اِنَّهٗ هُوَ الْعَزِيْزُ الرَّحِيْمُ ﴿٤٢﴾

४३. सिवाय ती व्यक्तिहरूबाहेक जसप्रति अल्लाहको करुणा रहनेछ । निश्चय नै उनी परम पराक्रमी, परम करुणाशील रहेका छन्

اِنَّ شَجَرَتَ الزَّقُّوْمِ ﴿٤٣﴾

४४. निस्सन्देह, जक्कुमको (सिउँडीको) वृक्ष

طَعَامُ الْاَثِيْمِ ﴿٤٤﴾

४५. पापीहरूको आहारा हुनेछ,

كَالْمُهْلِ ۚ يَغْلِيْ فِي الْبُطُوْنِ ﴿٤٥﴾

४६. पग्लिएको ताँबासदृश, त्यो (तिनीहरूको) पेटमा उम्लनेछ,

كَغَلْيِ الْحَمِيْمِ ﴿٤٦﴾

४७. तातो पानी उम्लिएभैं ।

خُذُوْهُ فَاعْتِلُوْهُ اِلٰى سَوَاۗءِ الْجَحِيْمِ ﴿٤٧﴾

४८. "त्यसलाई समात र घिस्याउँदै त्यसलाई प्रज्वलित अग्निको बीचमा लैजाऊ,

ثُمَّ صُبُّوْا فَوْقَ رَاْسِهٖ مِنْ عَذَابِ الْحَمِيْمِ ﴿٤٨﴾

४९. "त्यसपछि त्यसको टाउकोमा उम्लंदो पानीको दण्ड खन्याऊ ।"

ذُقْ إِنَّكَ أَنتَ الْعَزِيزُ الْكَرِيمُ ﴿٤٩﴾

५०. "(त्यसलाई) चाख ! तँ स्वयम्(लाई) पराकमी, सम्माननीय (ठान्ने गर्थिस्) ।

إِنَّ هَٰذَا مَا كُنتُم بِهِ تَمْتَرُونَ ﴿٥٠﴾

५१. "निस्सन्देह यो त्यही हो जसबारे तिमीहरू सन्देह गर्ने गर्थ्यौ ।"

إِنَّ الْمُتَّقِينَ فِي مَقَامٍ أَمِينٍ ﴿٥١﴾

५२. वस्तुतः धर्मनिष्ठ व्यक्तिहरूलाई सुरक्षापूर्ण स्थान प्राप्त हुनेछ,

فِي جَنَّاتٍ وَعُيُونٍ ﴿٥٢﴾

५३. बगैंचाहरू र पानीका मूलहरूका बीचमा,

يَلْبَسُونَ مِن سُندُسٍ وَإِسْتَبْرَقٍ مُّتَقَابِلِينَ ﴿٥٣﴾

५४. रेशम र मोटा किनखाबका पहिरन धारण गरी परस्पर मुखामुख भई बस्नेछन् ।

كَذَٰلِكَ وَزَوَّجْنَاهُم بِحُورٍ عِينٍ ﴿٥٤﴾

५५. (यो) यसै प्रकार (हुनेछ), तथा हामी ठूलाठूला (सुन्दर) नेत्रयुक्त युवतीहरू तिनीहरूलाई मित्रस्वरूप प्रदान गर्नेछौं ।

يَدْعُونَ فِيهَا بِكُلِّ فَاكِهَةٍ آمِنِينَ ﴿٥٥﴾

५६. त्यहाँ तिनीहरूले सबै (प्रकारका) फल झिकाउने छन्, (शान्ति र) सुरक्षाका साथ (रहनेछन्) ।

لَا يَذُوقُونَ فِيهَا الْمَوْتَ إِلَّا الْمَوْتَةَ الْأُولَىٰ ۖ وَوَقَاهُمْ عَذَابَ الْجَحِيمِ ﴿٥٦﴾

५७. त्यहाँ तिनीहरूले पहिलो मृत्युबाहेक मृत्य भोग्नु पर्नेछैन । तथा तिनीहरूलाई उनले नर्कको दण्डबाट बचाउनेछन्,

فَضْلًا مِّن رَّبِّكَ ۚ ذَٰلِكَ هُوَ الْفَوْزُ الْعَظِيمُ ﴿٥٧﴾

५८. (यो) तिम्रा प्रतिपालकको तर्फबाट कृपापूर्ण व्यवहारस्वरूप (हुनेछ) । यही नै सर्वोत्कृष्ट कृतकार्यता रहेको छ ।

فَإِنَّمَا يَسَّرْنَاهُ بِلِسَانِكَ لَعَلَّهُمْ يَتَذَكَّرُونَ ﴿٥٨﴾

५९. तथा हामीले यस (कुरान) लाई तिम्रो भाषामा सरल बनाएका छौं ताकि तिनीहरूले अर्ती लिऊन् ।

فَارْتَقِبْ إِنَّهُم مُّرْتَقِبُونَ ﴿٥٩﴾

६०. अतः तिमी प्रतीक्षा गर, निश्चय नै तिनीहरू (पनि) प्रतीक्षारत छन् ।

سُوْرَةُ الْجَاثِيَةِ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ ثَمَانٍ وَّثَلٰثُوْنَ اٰيَةً وَّاَرْبَعَةُ رُكُوْعَاتٍ

## अल्-जासिया:
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

حٰمٓ ②

२. हा मीम* ।

تَنْزِيْلُ الْكِتٰبِ مِنَ اللّٰهِ الْعَزِيْزِ الْحَكِيْمِ ③

३. परम पराक्रमी, परम तत्वज्ञ अल्लाहको तर्फबाट यो पुस्तक अवतीर्ण भएको हो ।

اِنَّ فِي السَّمٰوٰتِ وَ الْاَرْضِ لَاٰيٰتٍ لِّلْمُؤْمِنِيْنَ ④

४. निस्सन्देह, आकाशमण्डल र पृथ्वीमा विश्वास गर्ने व्यक्तिहरूका निम्ति धेरै चिह्नहरू रहेका छन् ।

وَ فِيْ خَلْقِكُمْ وَمَا يَبُثُّ مِنْ دَآبَّةٍ اٰيٰتٌ لِّقَوْمٍ يُّوْقِنُوْنَ ⑤

५. तथा तिमीहरूको आफ्नो सिर्जनामा र उनले (पृथ्वीमा) फैलाएका ती सम्पूर्ण प्राणीहरूमा दृढविश्वास राख्ने व्यक्तिहरूका निम्ति धेरै चिह्नहरू रहेका छन् ।

وَاخْتِلَافِ الَّيْلِ وَالنَّهَارِ وَمَآ اَنْزَلَ اللّٰهُ مِنَ السَّمَآءِ مِنْ رِّزْقٍ فَاَحْيَا بِهِ الْاَرْضَ بَعْدَ مَوْتِهَا وَ تَصْرِيْفِ الرِّيٰحِ اٰيٰتٌ لِّقَوْمٍ يَّعْقِلُوْنَ ⑥

६. तथा रात र दिनको अघिपछि भएर आउनुमा तथा अल्लाहले आकाशबाट अवतीर्ण गर्ने त्यस जीविका(को साधन)मा जसद्वारा पृथ्वीलाई उनले त्यसको मृत्युपश्चात् जीवित तुल्याउँछन्, तथा हावाको दिशा परिवर्तनमा बुझ्न (प्रयास गर्ने) व्यक्तिहरूका निम्ति धेरै चिह्नहरू रहेका छन् ।

تِلْكَ اٰيٰتُ اللّٰهِ نَتْلُوْهَا عَلَيْكَ بِالْحَقِّ فَبِاَيِّ حَدِيْثٍ بَعْدَ اللّٰهِ وَ اٰيٰتِهِ يُؤْمِنُوْنَ ⑦

७. यी अल्लाहका चिह्नहरू हुन् जसलाई हामी तिमीसमक्ष सत्यताका साथ वर्णन गर्छौं । अत: (यसको अस्वीकारपश्चात्) अल्लाह र उनका चिह्नहरूलाई छाडी तिनीहरूले अर्को)

---

* परम प्रशंसनीय, महिमामय ।

कुन कुराप्रति विश्वास गर्नेछन् त?

وَيْلٌ لِّكُلِّ أَفَّاكٍ أَثِيمٍ ۝٧

८. हरेक त्यो पापी मिथ्यावादी व्यक्तिमाथि धिक्कार छ,

يَسْمَعُ آيَاتِ اللَّهِ تُتْلَىٰ عَلَيْهِ ثُمَّ يُصِرُّ مُسْتَكْبِرًا كَأَن لَّمْ يَسْمَعْهَا ۖ فَبَشِّرْهُ بِعَذَابٍ أَلِيمٍ ۝٨

९. जसले उससमक्ष पाठ गरिएका अल्लाहका निर्देशनहरू सुन्छ, र त्यसपश्चात् अहङ्कारपूर्वक (आफ्नो अविश्वासमा) अडिग रहन्छ, मानौं त्यसले ती कुराहरूलाई सुन्दै सुनेन । अतः त्यस व्यक्तिलाई पीडादायक दण्डको सन्देश देऊ

وَإِذَا عَلِمَ مِنْ آيَاتِنَا شَيْئًا اتَّخَذَهَا هُزُوًا ۚ أُولَٰئِكَ لَهُمْ عَذَابٌ مُّهِينٌ ۝٩

१०. तथा जब त्यसलाई हाम्रा चिह्नहरूबाट केही कुराको ज्ञान प्राप्त हुन्छ, त्यसले तिनीहरूलाई ठट्टाको साधन बनाउन लाग्छ । यस्ता व्यक्तिहरूलाई अपमानजनक दण्ड मिल्नेछ ।

مِّن وَرَائِهِمْ جَهَنَّمُ ۖ وَلَا يُغْنِي عَنْهُم مَّا كَسَبُوا شَيْئًا وَلَا مَا اتَّخَذُوا مِن دُونِ اللَّهِ أَوْلِيَاءَ ۖ وَلَهُمْ عَذَابٌ عَظِيمٌ ۝١٠

११. तिनीहरूका सामुन्ने नर्क छ, तिनीहरूले कमाएको कुनै वस्तुले तिनीहरूलाई कुनै प्रकारको फाइदा दिनेछैन, न त तिनीहरूले नै जसलाई तिनीहरूले अल्लाहको स्थानमा आफ्ना संरक्षक तुल्याएका छन् । तथा तिनीहरूलाई ठूलो दण्ड मिल्नेछ ।

هَٰذَا هُدًى ۖ وَالَّذِينَ كَفَرُوا بِآيَاتِ رَبِّهِمْ لَهُمْ عَذَابٌ مِّن رِّجْزٍ أَلِيمٌ ۝١١

१२. यो मार्गदर्शन हो । तथा जसले आफ्ना प्रतिपालकका निर्देशनहरूप्रति अविश्वास गर्छन् तिनीहरूलाई पीडादायक दण्डको यातना मिल्नेछ ।

اللَّهُ الَّذِي سَخَّرَ لَكُمُ الْبَحْرَ لِتَجْرِيَ الْفُلْكُ فِيهِ بِأَمْرِهِ وَلِتَبْتَغُوا مِن فَضْلِهِ وَلَعَلَّكُمْ تَشْكُرُونَ ۝١٢

१३. अल्लाह उनै हुन् जसले समुद्रलाई तिमीहरूको सेवामा खटाएका छन् ताकि उनको आदेशअन्तर्गत जहाजहरू त्यसमा चल्ने गरून्, र तिमीहरू उनको अनुग्रह प्राप्तिको प्रचेष्टा गर, तथा तिमीहरू कृतज्ञ बन ।

وَ سَخَّرَ لَكُمْ مَّا فِي السَّمٰوٰتِ وَ مَا فِي الْاَرْضِ جَمِيْعًا مِّنْهُ ؕ اِنَّ فِيْ ذٰلِكَ لَاٰيٰتٍ لِّقَوْمٍ يَّتَفَكَّرُوْنَ ﴿۱۳﴾

१४. तथा आकाशमण्डल र पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरूलाई उनले तिमीहरूको सेवामा खटाएका छन्, (यो) सबै कुरा उनकै तर्फबाट (रहेको छ) । चिन्तन-मनन गर्ने व्यक्तिहरूका निम्ति यसमा धेरै चिह्नहरू रहेका छन् ।

قُلْ لِّلَّذِيْنَ اٰمَنُوْا يَغْفِرُوْا لِلَّذِيْنَ لَا يَرْجُوْنَ اَيَّامَ اللّٰهِ لِيَجْزِيَ قَوْمًا بِمَا كَانُوْا يَكْسِبُوْنَ ﴿۱۴﴾

१५. विश्वासीजनलाई, तिनीहरूले ती अल्लाहका प्रतिश्रुत दिनहरू (को आगमन हुने नै छ) ताकि उनले मानिसहरूलाई (एउटा जातिलाई) तिनीहरूले कमाएको प्रतिदान दिउन् (भन्ने कुरा) प्रति आशा (विश्वास) नराख्ने व्यक्तिहरूसित क्षमापूर्ण व्यवहार गर्ने गरून् भनी तिमी भनिदेउ ।

مَنْ عَمِلَ صَالِحًا فَلِنَفْسِهٖ ۚ وَ مَنْ اَسَآءَ فَعَلَيْهَا ۫ ثُمَّ اِلٰى رَبِّكُمْ تُرْجَعُوْنَ ﴿۱۵﴾

१६. जसले पुण्य कार्य गर्छ, उसले आफ्नै आत्माको -भलाइका) निम्ति त्यसो गर्छ, तथा जसले अपकर्म गर्छ, त्यसले आफ्नै क्षति साधन गर्न त्यसो गर्छ । त्यसपछि तिमीहरू (सबै)लाई तिमीहरूका प्रतिपालकतर्फ फर्काएर लगिनेछ ।

وَ لَقَدْ اٰتَيْنَا بَنِيْٓ اِسْرَآءِيْلَ الْكِتٰبَ وَ الْحُكْمَ وَ النُّبُوَّةَ وَ رَزَقْنٰهُمْ مِّنَ الطَّيِّبٰتِ وَ فَضَّلْنٰهُمْ عَلَى الْعٰلَمِيْنَ ﴿۱۶﴾

१७. तथा इजरायलका सन्तानलाई हामीले निस्सन्देह पुस्तक र सार्वभौमिकता तथा नबुव्वत् (सिद्धता) प्रदान गरेका थियौं, तथा तिनीहरूलाई (उत्तम र) पवित्र जीविकाका साधनहरू प्रदान गरेका थियौं, तथा तिनीहरूलाई (समकालीन) जातिहरूमाथि प्राधान्य प्रदान गरेका थियौं ।

وَ اٰتَيْنٰهُمْ بَيِّنٰتٍ مِّنَ الْاَمْرِ ۚ فَمَا اخْتَلَفُوْٓا اِلَّا مِنْۢ بَعْدِ مَا جَآءَهُمُ الْعِلْمُ ۙ بَغْيًۢا بَيْنَهُمْ ؕ اِنَّ رَبَّكَ يَقْضِيْ بَيْنَهُمْ يَوْمَ الْقِيٰمَةِ فِيْمَا كَانُوْا فِيْهِ يَخْتَلِفُوْنَ ﴿۱۷﴾

१८. तथा हामीले तिनीहरूलाई विधानका सम्बन्धमा स्पष्ट निर्देशनहरू दिएका थियौं । तथा तिनीहरूले तिनीहरूसमक्ष (सत्य) ज्ञानको आगमनपश्चात् मात्र परस्पर द्वेषभावका कारण त्यसबारे मतभेद गरे । तिम्रा प्रतिपालकले पुनरुत्थानका दिन तिनीहरूले मतभेद राख्ने गरेका कुराहरूका सम्बन्धमा निस्सन्देह तिनीहरूका बीचमा

निर्णय गर्नेछन् ।

१९. त्यसपछि हामीले तिमीलाई विधानको एउटा स्पष्ट मार्गमा स्थापित गऱ्यौं, अत: यसको अनुसरण गर, तथा अज्ञानी व्यक्तिहरूका कु-अभिलाषाहरूको अनुसरण नगर ।

ثُمَّ جَعَلْنَٰكَ عَلَىٰ شَرِيعَةٍ مِّنَ ٱلْأَمْرِ فَٱتَّبِعْهَا وَلَا تَتَّبِعْ أَهْوَآءَ ٱلَّذِينَ لَا يَعْلَمُونَ ﴿١٨﴾

२०. वस्तुत: अल्लाहविरुद्ध तिनीहरूले तिमीलाई कुनै प्रकारको लाभ पुऱ्याउन सक्नेछैनन् । तथा अत्यचारीहरू परस्पर एक-अर्काका मित्र हुन्छन्, परन्तु अल्लाह धर्मनिष्ठ व्यक्तिहरूका मित्र रहेका छन् ।

إِنَّهُمْ لَن يُغْنُوا۟ عَنكَ مِنَ ٱللَّهِ شَيْـًٔا ۚ وَإِنَّ ٱلظَّٰلِمِينَ بَعْضُهُمْ أَوْلِيَآءُ بَعْضٍ ۖ وَٱللَّهُ وَلِيُّ ٱلْمُتَّقِينَ ﴿١٩﴾

२१. यो (पुस्तक) मानवजातिका निम्ति स्पष्ट प्रमाणहरूले परिपूर्ण तथा दृढ विश्वासी व्यक्तिहरूका निम्ति मार्गदर्शन र करुणास्वरूप रहेको छ ।

هَٰذَا بَصَٰٓئِرُ لِلنَّاسِ وَهُدًى وَرَحْمَةٌ لِّقَوْمٍ يُوقِنُونَ ﴿٢٠﴾

२२. के ती दुष्कार्य गर्ने व्यक्तिहरू हामीले तिनीहरूलाई विश्वास गर्ने र पुण्यकार्य गर्ने व्यक्तिहरूतुल्य बनाउनेछौं, फलस्वरूप यिनीहरूको र उनीहरूको जीवन र मृत्युको एउटै अवस्था हुनेछ भन्ने ठान्छन् त? तिनीहरूको निर्णय (निस्सन्देह) अति निकृष्ट रहेको छ ।

أَمْ حَسِبَ ٱلَّذِينَ ٱجْتَرَحُوا۟ ٱلسَّيِّـَٔاتِ أَن نَّجْعَلَهُمْ كَٱلَّذِينَ ءَامَنُوا۟ وَعَمِلُوا۟ ٱلصَّٰلِحَٰتِ سَوَآءً مَّحْيَاهُمْ وَمَمَاتُهُمْ ۚ سَآءَ مَا يَحْكُمُونَ ﴿٢١﴾

२३. तथा आकाशमण्डल र पृथ्वीलाई अल्लाहले सत्यमा आधारित सृष्टि गरेका छन् फलस्वरूप हरेक व्यक्तिले आफ्नो कमाइको प्रतिफल पाउनेछ, तथा तिनीहरूमाथि कुनै प्रकारको अत्याचार गरिनेछैन ।

وَخَلَقَ ٱللَّهُ ٱلسَّمَٰوَٰتِ وَٱلْأَرْضَ بِٱلْحَقِّ وَلِتُجْزَىٰ كُلُّ نَفْسٍۭ بِمَا كَسَبَتْ وَهُمْ لَا يُظْلَمُونَ ﴿٢٢﴾

२४. जुनव्यक्तिले आफ्नै अभिलापाहरूलाई आफ्नो उपास्य बनाएको छ, र जसलाई अल्लाहले ज्ञानको आधारमा पथभ्रष्ट घोषित गरेका छन्, र जसका कान र हृदयमा उनले मोहर ठोकेका छन्, र

أَفَرَءَيْتَ مَنِ ٱتَّخَذَ إِلَٰهَهُۥ هَوَىٰهُ وَأَضَلَّهُ ٱللَّهُ عَلَىٰ عِلْمٍ وَخَتَمَ عَلَىٰ سَمْعِهِۦ وَقَلْبِهِۦ وَجَعَلَ عَلَىٰ بَصَرِهِۦ غِشَٰوَةً فَمَن يَهْدِيهِ مِنۢ بَعْدِ ٱللَّهِ ۚ أَفَلَا تَذَكَّرُونَ ﴿٢٣﴾

जसका नेत्रहरूमा उनले पर्दा लगाइदिएका छन् के तिमीले त्यस(को अवस्था)प्रति ध्यान दिएका छौ? अतः अल्लाह( ले त्यसलाई दोषी घोषित गरे) पश्चात् त्यसलाई कसले मार्ग देखाउन सक्छ र? अतः के तिमीहरू अर्ती लिदैनौ त?

२५. तथा तिनीहरू भन्छन्, "यही हाम्रो वर्तमान जीवन नै एकमात्र जीवन हो, यहीं नै) हामी मर्छौं र यहीं नै जीवन यापन गर्छौं, तथा समयले नै हामीलाई ध्वस्त पार्छ ।" परन्तु तिनीहरूलाई यसको ज्ञान प्राप्त छैन, तिनीहरू केवल अड्कलबाजी लगाउँछन् ।

وَقَالُوا مَا هِيَ إِلَّا حَيَاتُنَا الدُّنْيَا نَمُوتُ وَنَحْيَا وَمَا يُهْلِكُنَا إِلَّا الدَّهْرُ ۚ وَمَا لَهُم بِذَٰلِكَ مِنْ عِلْمٍ ۖ إِنْ هُمْ إِلَّا يَظُنُّونَ ﴿٢٤﴾

२६. तथा जब तिनीहरूसमक्ष हाम्रा स्पष्ट निर्देशनहरूको पाठ गरिन्छ, तिनीहरूको केवल के भन्ने तर्क रहन्छ भने, "यदि तिमीहरू साँचा हौ भने हाम्रा पुर्खाहरूलाई (फर्काएर) ल्याऊ ।"

وَإِذَا تُتْلَىٰ عَلَيْهِمْ آيَاتُنَا بَيِّنَاتٍ مَّا كَانَ حُجَّتَهُمْ إِلَّا أَن قَالُوا ائْتُوا بِآبَائِنَا إِن كُنتُمْ صَادِقِينَ ﴿٢٥﴾

२७. तिमी भन, "(ती)अल्लाह नै (हुन् जसले) तिमीहरूलाई जीवन दान गर्छन्, त्यसपछि तिमीहरूलाई मृत्यु प्रदान गर्छन्, त्यसपछि उनले तिमीहरूलाई पुनरुत्थानका दिनसम्म एकत्रित गर्दै जानेछन् जसका सम्बन्धमा कुनै सन्देह छैन । परन्तु अधिकतर मानिसहरू जान्दैनन् ।"

قُلِ اللَّهُ يُحْيِيكُمْ ثُمَّ يُمِيتُكُمْ ثُمَّ يَجْمَعُكُمْ إِلَىٰ يَوْمِ الْقِيَامَةِ لَا رَيْبَ فِيهِ وَلَٰكِنَّ أَكْثَرَ النَّاسِ لَا يَعْلَمُونَ ﴿٢٦﴾

२८. आकाशमण्डल र पृथ्वीको राज्य अल्लाहकै रहेको छ, तथा जब निर्धारित घडीको समय आउनेछ त्यसदिन सत्यका अस्वीकारीहरू नै दुःखी हुन पुग्नेछन् ।

وَلِلَّهِ مُلْكُ السَّمَاوَاتِ وَالْأَرْضِ ۚ وَيَوْمَ تَقُومُ السَّاعَةُ يَوْمَئِذٍ يَخْسَرُ الْمُبْطِلُونَ ﴿٢٧﴾

२९. तथा हरेक जातिका मानिसहरूलाई तिमीले घुँडा टेकेको अवस्थामा देख्नेछौ । हरेक जातिका मानिसहरूलाई तिनीहरूकै अभिलेख (ग्रन्थ) तर्फ बोलाइनेछ, (तथा तिनीहरूलाई के भनिने छ भने), "आजको

وَتَرَىٰ كُلَّ أُمَّةٍ جَاثِيَةً ۚ كُلُّ أُمَّةٍ تُدْعَىٰ إِلَىٰ كِتَابِهَا الْيَوْمَ تُجْزَوْنَ مَا كُنتُمْ تَعْمَلُونَ ﴿٢٨﴾

दिन तिमीहरूले (पहिला) गरेका कार्यहरूअनुसार नै तिमीहरूलाई प्रतिदान दिइनेछ ।

هَٰذَا كِتَٰبُنَا يَنطِقُ عَلَيْكُم بِالْحَقِّ ۚ إِنَّا كُنَّا نَسْتَنسِخُ مَا كُنتُمْ تَعْمَلُونَ ٣٠

३०. "यो हाम्रो पुस्तक हो, तिमीहरूविरुद्ध यसले साँचो साक्षी दिइरहेछ । तिमीहरूले गरेका (सम्पूर्ण) कार्यहरू हामी (पूर्णरूपमा) लिपिवद्ध गर्ने गर्थ्यौं ।"

فَأَمَّا الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ فَيُدْخِلُهُمْ رَبُّهُمْ فِي رَحْمَتِهِ ۚ ذَٰلِكَ هُوَ الْفَوْزُ الْمُبِينُ ٣١

३१. अत: जसले विश्वास गर्थे र पुण्य कार्य गर्ने गर्थे, तिनीहरूका प्रतिपालकले तिनीहरूलाई आफ्नो करुणामा दाखिल गर्नेछन् । यही नै स्पष्ट कार्यसाधन रहेको छ ।

وَأَمَّا الَّذِينَ كَفَرُوا أَفَلَمْ تَكُنْ آيَاتِي تُتْلَىٰ عَلَيْكُمْ فَاسْتَكْبَرْتُمْ وَكُنتُمْ قَوْمًا مُّجْرِمِينَ ٣٢

३२. परन्तु जहाँसम्म अविश्वासी व्यक्तिहरूको प्रश्न छ: "के तिमीहरूसमक्ष मेरा निर्देशनहरू पढेर सुनाइदैनथ्यो? परन्तु तिमीहरू घमण्ड गर्ने गर्थ्यौं तथा तिमीहरू अपराधी मानिसहरू बन्न पुगेका थियौ ।

وَإِذَا قِيلَ إِنَّ وَعْدَ اللَّهِ حَقٌّ وَالسَّاعَةُ لَا رَيْبَ فِيهَا قُلْتُم مَّا نَدْرِي مَا السَّاعَةُ إِن نَّظُنُّ إِلَّا ظَنًّا وَمَا نَحْنُ بِمُسْتَيْقِنِينَ ٣٣

३३. "तथा जब भनिन्थ्यो, "अल्लाहको वचन नितान्त सत्य रहेको छ, तथा निर्धारित घडीको (आगमनको) सम्बन्धमा कुनै सन्देह रहेको छैन, (तब) तिमीहरू भन्थ्यौ, "निर्धारित घडी भनेको के हो हामीलाई थाहा छैन, हामी ता त्यसलाई एउटा अड्कलबाजीबाहेक अन्य केही होइन भन्ने ठान्छौं, तथा हामीलाई पटकै विश्वास छैन ।"

وَبَدَا لَهُمْ سَيِّئَاتُ مَا عَمِلُوا وَحَاقَ بِهِم مَّا كَانُوا بِهِ يَسْتَهْزِئُونَ ٣٤

३४. तथा त्यससमय तिनीहरूसमक्ष तिनीहरूले गरेका कार्यहरूको निकृष्ट (परिणाम) जाहेर हुनेछ, तथा जुन कुराहरूप्रति तिनीहरू हाँस्ने गर्थे ती कुराहरूले नै तिनीहरूलाई वेष्ठित गर्नेछन्

وَقِيلَ الْيَوْمَ نَنسَاكُمْ كَمَا نَسِيتُمْ لِقَاءَ يَوْمِكُمْ هَٰذَا وَمَأْوَاكُمُ النَّارُ وَمَا لَكُم مِّن نَّاصِرِينَ ٣٥

३५. तथा (तिनीहरूलाई) के भनिनेछ भने, "जसरी तिमीहरूले आफ्नो यस दिनको

साक्षात्कारलाई बिर्सिएका थियौ त्यसरी नै आज हामी तिमीहरूलाई बिर्सने छौं । तथा तिमीहरूको बास अग्निकुण्ड रहेको छ, तथा तिमीहरूको सहयोगी कोही हुनेछैन ।

ذَٰلِكُم بِأَنَّكُمُ ٱتَّخَذْتُمْ ءَايَٰتِ ٱللَّهِ هُزُوًا وَغَرَّتْكُمُ ٱلْحَيَوٰةُ ٱلدُّنْيَا ۚ فَٱلْيَوْمَ لَا يُخْرَجُونَ مِنْهَا وَلَا هُمْ يُسْتَعْتَبُونَ ﴿٣٥﴾

३६. "यो (किन) यसै प्रकार हुनेछ (भने), अल्लाहका चिह्नहरूलाई तिमीहरूले ठट्टाका साधन बनाएका थियौ, तथा सांसारिक जीवनले तिमीहरूलाई धोका दिएको थियो ।" ' त्यसकारण, त्यसदिन त्यहाँबाट तिनीहरूलाई निकालिने छैन, न त तिनीहरूलाई ढोकामा प्रवेश गर्ने अनुमति नै दिइनेछ ।

فَلِلَّهِ ٱلْحَمْدُ رَبِّ ٱلسَّمَٰوَٰتِ وَرَبِّ ٱلْأَرْضِ رَبِّ ٱلْعَٰلَمِينَ ﴿٣٦﴾

३७. अत: आकाशमण्डलका स्वामी, र पृथ्वी र सम्पूर्ण ब्रह्माण्डका स्वामी, अल्लाहकै निम्ति (सम्पूर्ण) प्रशंसा रहेको छ

وَلَهُ ٱلْكِبْرِيَآءُ فِى ٱلسَّمَٰوَٰتِ وَٱلْأَرْضِ ۖ وَهُوَ ٱلْعَزِيزُ ٱلْحَكِيمُ ﴿٣٧﴾

३८. तथा आकाशमण्डल र पृथ्वीमा उनकै गरिमा रहेको छ, तथा उनी सर्वशक्तिमान तत्वज्ञ रहेका छन् ।




## अल्-अहक़ाफ
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु परम दयालु, अल्लाहको नाममा ।

حٰمٓ ②

२. हा मीम* ।

تَنْزِيْلُ الْكِتٰبِ مِنَ اللّٰهِ الْعَزِيْزِ الْحَكِيْمِ ③

३. परम पराक्रमी, परम तत्वज्ञ, अल्लाहको तर्फबाट यो पुस्तक अवतीर्ण भएको हो ।

مَا خَلَقْنَا السَّمٰوٰتِ وَ الْاَرْضَ وَ مَا بَيْنَهُمَآ اِلَّا بِالْحَقِّ وَ اَجَلٍ مُّسَمًّى ؕ وَالَّذِيْنَ كَفَرُوْا عَمَّآ اُنْذِرُوْا مُعْرِضُوْنَ ④

४. आकाशमण्डल र पृथ्वी, तथा ती दुबैका बीचमा रहेका सम्पूर्ण वस्तुहरूलाई सत्यमा आधारित तथा एउटा निर्धारित समयसम्मका निम्ति हामीले सिर्जना गरेका छौं, परन्तु अविश्वासी व्यक्तिहरू त्यस कुराबाट विमुख भइरहेछन् जसबाट तिनीहरूलाई सावधान गरिएको छ ।

قُلْ اَرَءَيْتُمْ مَّا تَدْعُوْنَ مِنْ دُوْنِ اللّٰهِ اَرُوْنِيْ مَا ذَا خَلَقُوْا مِنَ الْاَرْضِ اَمْ لَهُمْ شِرْكٌ فِي السَّمٰوٰتِ ؕ اِيْتُوْنِيْ بِكِتٰبٍ مِّنْ قَبْلِ هٰذَآ اَوْ اَثٰرَةٍ مِّنْ عِلْمٍ اِنْ كُنْتُمْ صٰدِقِيْنَ ⑤

५. तिमी भन, “अल्लाहलाई छाडी जसलाई तिमीहरू पुकार्छौं के तिनीहरूबारे तिमीहरूलाई केही ज्ञान छ? पृथ्वीमा तिनीहरूले के सिर्जना गरेका छन् मलाई देखाऊ । अथवा के आकाशमण्डल(को सिर्जनामा) तिनीहरूको कुनै हिस्सेदारी रहेको छ त? यदि तिमीहरू (वास्तवमै) आफ्ना कुरामा साँचा रहेका छौ भने, यसअघि (अवतीर्ण भएको) कुनै पुस्तक अथवा (आफ्नो समर्थनमा) कुनै ज्ञानको प्रतिलिपि नै मसमक्ष प्रस्तुत गर ।”

* परम प्रशंसनीय, महिमामय ।

وَمَنْ اَضَلُّ مِمَّنْ يَّدْعُوْا مِنْ دُوْنِ اللّٰهِ مَنْ لَّا يَسْتَجِيْبُ لَهٗٓ اِلٰى يَوْمِ الْقِيٰمَةِ وَهُمْ عَنْ دُعَآئِهِمْ غٰفِلُوْنَ ۝٥

६. तथा ती व्यक्तिहरूभन्दा अधिक पथभ्रष्ट को हुन सक्छ र जसले अल्लाहलाई छाडी यस्ता वस्तुहरूलाई पुकार्छन् जसले पुनरुत्थानका दिनसम्म तिनीहरूको प्रार्थनाको उत्तर दिन सक्नेछैनन्, अपितु उनीहरूलाई ता तिनीहरूको प्रार्थनाबारे थाहासमेत छैन?

وَاِذَا حُشِرَ النَّاسُ كَانُوْا لَهُمْ اَعْدَآءً وَّكَانُوْا بِعِبَادَتِهِمْ كٰفِرِيْنَ ۝٦

७. तथा जब मानिसहरूलाई पुनर्जीवित गरी एकत्रित गरिनेछ उनीहरू तिनीहरूका शत्रु बन्न पुग्नेछन्, तथा तिनीहरूको उपासनालाई अस्वीकार गर्नेछन् ।

وَاِذَا تُتْلٰى عَلَيْهِمْ اٰيٰتُنَا بَيِّنٰتٍ قَالَ الَّذِيْنَ كَفَرُوْا لِلْحَقِّ لَمَّا جَآءَهُمْ ۙ هٰذَا سِحْرٌ مُّبِيْنٌ ۝٧

८. तथा जब तिनीहरूसमक्ष हाम्रा स्पष्ट चिह्नहरू पढेर सुनाइन्छ, अविश्वासी व्यक्तिहरू सत्यका सम्बन्धमा के भन्छन् भने, "यो ता खुल्लम-खुल्ला जादु टुना हो ।"

اَمْ يَقُوْلُوْنَ افْتَرٰىهُ ۗ قُلْ اِنِ افْتَرَيْتُهٗ فَلَا تَمْلِكُوْنَ لِيْ مِنَ اللّٰهِ شَيْئًا ۗ هُوَ اَعْلَمُ بِمَا تُفِيْضُوْنَ فِيْهِ ۗ كَفٰى بِهٖ شَهِيْدًاۢ بَيْنِيْ وَبَيْنَكُمْ ۗ وَهُوَ الْغَفُوْرُ الرَّحِيْمُ ۝٨

९. के "त्यसले यसलाई स्वयम् गढेको हो" भनी तिनीहरू भन्ने गर्छन्? तिमी भन, "यदि यो मैले गढेको कुरो हो भने, अल्लाहविरुद्ध तिमीहरूले मेरो कुनै सहयोग गर्न सक्नेछैनौ । जुन (निरर्थक) कुराहरू गर्नमा तिमीहरू व्यस्त रहन्छौ अल्लाहले ती कुराहरूलाई राम्ररी जान्दछन् । तिमीहरू र मेरा बीचमा साक्षीस्वरूप उनी पर्याप्त रहेका छन् । तथा उनी परम क्षमाशील, परम करुणाशील छन् ।"

قُلْ مَا كُنْتُ بِدْعًا مِّنَ الرُّسُلِ وَمَآ اَدْرِيْ مَا يُفْعَلُ بِيْ وَلَا بِكُمْ ۗ اِنْ اَتَّبِعُ اِلَّا مَا يُوْحٰٓى اِلَيَّ وَمَآ اَنَا اِلَّا نَذِيْرٌ مُّبِيْنٌ ۝٩

१०. तिमी भन, "म कोही नयाँ सन्देशवाहक ता होइन, न त (यस जीवनमा) मसित अथवा तिमीहरूसित कस्तो व्यवहार गरिनेछ भन्ने कुरालाई नै म जान्दछु । म ता केवल त्यही कुराको अनुसरण गर्ने गर्छु जुन कुरा मप्रति अवतीर्ण गरिएको छ, तथा म केवल एउटा

स्पष्टरूपमा सतर्क गर्ने व्यक्ति हुँ ।"

قُلْ أَرَأَيْتُمْ إِن كَانَ مِنْ عِندِ اللَّهِ وَكَفَرْتُم بِهِ وَشَهِدَ شَاهِدٌ مِّن بَنِي إِسْرَائِيلَ عَلَىٰ مِثْلِهِ فَآمَنَ وَاسْتَكْبَرْتُمْ إِنَّ اللَّهَ لَا يَهْدِي الْقَوْمَ الظَّالِمِينَ ﴿١٠﴾

११. तिमी भन, "तिमीहरू मलाई भन, यदि यो अल्लाहको तर्फबाट रहेको भएमा र तिमीहरूले यसप्रति अविश्वास गरेमा, तथा इजरायलका सन्तानबाट एकजना साक्षीले उनीजस्तै एकजना व्यक्तिको (आगमनबारे) साक्षी दिइसकेका अवस्थामा, उनले भने विश्वास गरे, परन्तु तिमीहरू भने अहङ्कार गरिरहेछौ, (अत: तिमीहरूको के अवस्था होला त)?" निस्सन्देह, अल्लाहले अत्याचारी व्यक्तिहरूलाई मार्ग देखाउँदैनन् ।

وَقَالَ الَّذِينَ كَفَرُوا لِلَّذِينَ آمَنُوا لَوْ كَانَ خَيْرًا مَّا سَبَقُونَا إِلَيْهِ وَإِذْ لَمْ يَهْتَدُوا بِهِ فَسَيَقُولُونَ هَٰذَا إِفْكٌ قَدِيمٌ ﴿١١﴾

१२. तथा अविश्वासी व्यक्तिहरू विश्वासीजनसित के भन्छन् भने, "यदि यसमा कुनै असल कुरा रहेको भए तिनीहरू त्यसलाई प्राप्त गर्न हामीभन्दा अघि बढ्न सक्ने नै थिएनन् ।" तथा अहिलेसम्म त्यसद्वारा तिनीहरूलाई सन्मार्ग प्राप्त नभएको हुनाले तिनीहरूले के भन्नेछन् भने, "यो ता एउटा प्राचीन काल (देखि चल्दै आए) को मिथ्या कुरो हो ।"

وَمِن قَبْلِهِ كِتَابُ مُوسَىٰ إِمَامًا وَرَحْمَةً وَهَٰذَا كِتَابٌ مُّصَدِّقٌ لِّسَانًا عَرَبِيًّا لِّيُنذِرَ الَّذِينَ ظَلَمُوا وَبُشْرَىٰ لِلْمُحْسِنِينَ ﴿١٢﴾

१३. तथा यसअघि मूसाको पुस्तक मार्गदर्शन र करुणास्वरूप थियो; तथा यो (पहिलाका भविष्यवाणीहरूको) पूरकस्वरूप अरबी भाषाको पुस्तक हो, ताकि यसले अत्याचारीहरूलाई सावधान गरोस्; तथा यो पुण्यकर्मी व्यक्तिहरूका निम्ति शुभसन्देशस्वरूप रहेको छ ।

إِنَّ الَّذِينَ قَالُوا رَبُّنَا اللَّهُ ثُمَّ اسْتَقَامُوا فَلَا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُونَ ﴿١٣﴾

१४. वस्तुत: जसले "हाम्रा प्रतिपालक अल्लाह नै हुन्," भनी भन्ने गर्छन् (तथा) दृढ रहने गर्छन्– तिनीहरूलाई (कहिल्यै) डरले छुनेछैन, न त तिनीहरू शोकग्रस्त नै हुनेछन्

१५. तिनीहरू नै बगैंचाका निवासी रहेका छन्, तिनीहरू त्यहाँ सदा बसोबास गर्नेछन्– यो तिनीहरूले पहिला गरेका कार्यहरूको प्रतिदानस्वरूप हुनेछ ।

أُولَٰٓئِكَ أَصْحَٰبُ ٱلْجَنَّةِ خَٰلِدِينَ فِيهَا جَزَآءًۢ بِمَا كَانُوا۟ يَعْمَلُونَ ⑮

१६. तथा मानिसलाई हामीले आफ्ना मातापिताप्रति सद्‌भावपूर्ण व्यवहार गर्ने आदेश दिएका छौं । उसकी आमाले उसलाई कष्ट सहन गरी गर्भमा बहन गर्ने गर्छे, तथा कष्ट सहन गरी जन्माउँछे । तथा उसलाई बहन गर्न र दूध छूटाउन जम्मा तीस महिनाको समय लाग्छ, अतः जब त्यो व्यक्ति आफ्नो परिपक्वताको उमेरमा पुग्छ र चालीस वर्ष टेक्छ, तब उसले भन्छ, “हे मेरा प्रतिपालक, जुन अनुग्रह तिमीले ममाथि र मेरा माता-पितामाथि गरेका छौ त्यसप्रति कृतज्ञ बन्ने र मलाई यस्ता पुण्य कार्यहरू गर्ने (शक्ति) प्रदान गर जसबाट तिमी प्रसन्न हुन्छौ । तथा मेरा निम्ति मेरा सन्तानहरूलाई समेत धर्मनिष्ठ बनाऊ । म तिमीतर्फ झुक्छु, तथा म साँच्चै नै (तिम्रा) आज्ञाकारी व्यक्तिहरूमध्ये एक रहेको छु ।”

وَوَصَّيْنَا ٱلْإِنسَٰنَ بِوَٰلِدَيْهِ إِحْسَٰنًا ۖ حَمَلَتْهُ أُمُّهُۥ كُرْهًا وَوَضَعَتْهُ كُرْهًا ۖ وَحَمْلُهُۥ وَفِصَٰلُهُۥ ثَلَٰثُونَ شَهْرًا ۚ حَتَّىٰٓ إِذَا بَلَغَ أَشُدَّهُۥ وَبَلَغَ أَرْبَعِينَ سَنَةً قَالَ رَبِّ أَوْزِعْنِىٓ أَنْ أَشْكُرَ نِعْمَتَكَ ٱلَّتِىٓ أَنْعَمْتَ عَلَىَّ وَعَلَىٰ وَٰلِدَىَّ وَأَنْ أَعْمَلَ صَٰلِحًا تَرْضَىٰهُ وَأَصْلِحْ لِى فِى ذُرِّيَّتِىٓ ۖ إِنِّى تُبْتُ إِلَيْكَ وَإِنِّى مِنَ ٱلْمُسْلِمِينَ ⑯

१७. यिनीहरू नै ती व्यक्तिहरू हुन् जसका पुण्य कार्यहरू हामी स्वीकार गर्छौं तथा अपकर्महरूप्रति तिनीहरूलाई माफ गर्छौं । तिनीहरूलाई दिइएको सत्य वचन( को परिपूर्ति) स्वरूप (तिनीहरू) बगैंचामा बसोबास गर्ने व्यक्तिहरूमा सामेल हुन पुग्नेछन् ।

أُولَٰٓئِكَ ٱلَّذِينَ نَتَقَبَّلُ عَنْهُمْ أَحْسَنَ مَا عَمِلُوا۟ وَنَتَجَاوَزُ عَن سَيِّـَٔاتِهِمْ فِىٓ أَصْحَٰبِ ٱلْجَنَّةِ ۖ وَعْدَ ٱلصِّدْقِ ٱلَّذِى كَانُوا۟ يُوعَدُونَ ⑰

१८. परन्तु एउटा यस्तो व्यक्ति पनि हुन्छ जसले आफ्ना मातापितासित (के) भन्छ (भने), “तिमीहरू दुबैप्रति धिक्कार छ ! जब म भन्दा पहिला पुस्तौं पुस्ता व्यतीत भइसकेका छन् भने, के तिमीहरू चाहिँ मलाई पुनर्जीवित गरिनेछ भनी डर

وَٱلَّذِى قَالَ لِوَٰلِدَيْهِ أُفٍّ لَّكُمَآ أَتَعِدَانِنِىٓ أَنْ أُخْرَجَ وَقَدْ خَلَتِ ٱلْقُرُونُ مِن قَبْلِى وَهُمَا يَسْتَغِيثَانِ ٱللَّهَ وَيْلَكَ ءَامِنْ إِنَّ وَعْدَ ٱللَّهِ حَقٌّ

देखाउँछौ?" तथा तिनीहरू दुबै अल्लाहलाई सहयोगका निम्ति पुकार्दै( उ ससित के भन्छन् भने), "तिमीप्रति धिक्कार छ ! तिमी विश्वास गर, किनभने अल्लाहको वचन नितान्त सत्य रहेको छ ।" परन्तु त्यसले के भन्छ भने, "यो ता केवल प्राचीन मानवहरूको कथा हो ।"

فَيَقُولُ مَا هَٰذَآ إِلَّآ أَسَٰطِيرُ ٱلْأَوَّلِينَ ﴿١٨﴾

१९. यिनीहरू नै ती व्यक्तिहरू हुन् जसका विरुद्ध तिनीहरूभन्दा पहिला गुज्रेका जिन्न र मानव जातिहरूसहित (दण्डको) भविष्यवाणी पूर्ण हुन पुग्यो । निःस्सन्देह, तिनीहरू नै घाटाग्रस्त व्यक्तिहरू थिए ।

أُو۟لَٰٓئِكَ ٱلَّذِينَ حَقَّ عَلَيْهِمُ ٱلْقَوْلُ فِىٓ أُمَمٍ قَدْ خَلَتْ مِن قَبْلِهِم مِّنَ ٱلْجِنِّ وَٱلْإِنسِ ۖ إِنَّهُمْ كَانُوا۟ خَٰسِرِينَ ﴿١٩﴾

२०. तथा सबैलाई तिनीहरूले गरेका कार्यहरूअनुसार दर्जा प्राप्त हुनेछ, ताकि अल्लाहले तिनीहरूको कार्यको पूर्ण प्रतिदान तिनीहरूलाई प्रदान गरुन्, तथा तिनीहरूमाथि कुनै प्रकारको अत्याचार नहोस् ।

وَلِكُلٍّ دَرَجَٰتٌ مِّمَّا عَمِلُوا۟ ۖ وَلِيُوَفِّيَهُمْ أَعْمَٰلَهُمْ وَهُمْ لَا يُظْلَمُونَ ﴿٢٠﴾

२१. तथा त्यसदिन जब अविश्वासीहरूलाई अग्निसमक्ष उपस्थित गरिनेछ, (तिनीहरूलाई के भनिनेछ भने), "तिमीहरूले आफ्ना सम्पूर्ण उत्तम वस्तुहरू सांसारिक जीवनमै समाप्त गर्‍यौ, तथा तिनीहरूबाट (पूर्ण) सुखभोग गर्‍यौ । अतः तिमीहरूले पृथ्वीमा अनाहक अहङ्कार गरेका र विद्रोहपूर्ण कार्यहरू गरेका हुनाले आज तिमीहरूलाई अपमानजनक दण्ड दिइनेछ ।"

وَيَوْمَ يُعْرَضُ ٱلَّذِينَ كَفَرُوا۟ عَلَى ٱلنَّارِ أَذْهَبْتُمْ طَيِّبَٰتِكُمْ فِى حَيَاتِكُمُ ٱلدُّنْيَا وَٱسْتَمْتَعْتُم بِهَا ۖ فَٱلْيَوْمَ تُجْزَوْنَ عَذَابَ ٱلْهُونِ بِمَا كُنتُمْ تَسْتَكْبِرُونَ فِى ٱلْأَرْضِ بِغَيْرِ ٱلْحَقِّ وَبِمَا كُنتُمْ تَفْسُقُونَ ﴿٢١﴾

२२. तथा आदका भाइको उल्लेख गर, जब उसले बालुवाका पहाडहरूका बीचमा आफ्ना मानिसहरूलाई सतर्क गरेका थिए– तथा उनीभन्दा पहिला र उनीभन्दा पछि पनि (के भन्दै) सतर्ककारीहरू आएका थिए (भने), "केवल अल्लाहको उपासना गर, म

وَٱذْكُرْ أَخَا عَادٍ إِذْ أَنذَرَ قَوْمَهُۥ بِٱلْأَحْقَافِ وَقَدْ خَلَتِ ٱلنُّذُرُ مِنۢ بَيْنِ يَدَيْهِ وَمِنْ خَلْفِهِۦٓ أَلَّا تَعْبُدُوٓا۟ إِلَّا ٱللَّهَ إِنِّىٓ أَخَافُ عَلَيْكُمْ عَذَابَ يَوْمٍ عَظِيمٍ ﴿٢٢﴾

तिमीहरूमाथि आइलाग्ने एउटा भयानक दिनको दण्डप्रति डराउँछु ।"

قَالُوٓا أَجِئْتَنَا لِتَأْفِكَنَا عَنْ ءَالِهَتِنَا فَأْتِنَا بِمَا تَعِدُنَآ إِن كُنتَ مِنَ الصَّٰدِقِينَ ﴿٢٢﴾

२३. तिनीहरूले भने, "के तिमी हामीलाई हाम्रा उपास्यहरूबाट विमुख तुल्याउन आएका हौ? अत: यदि तिमी साँचा हौ भने हामीसमक्ष त्यो कुरो प्रस्तुत गर जसबाट तिमी हामीलाई धम्क्याउने गर्छौं ।"

قَالَ إِنَّمَا الْعِلْمُ عِندَ اللَّهِ وَأُبَلِّغُكُم مَّآ أُرْسِلْتُ بِهِۦ وَلَٰكِنِّيٓ أَرَىٰكُمْ قَوْمًا تَجْهَلُونَ ﴿٢٣﴾

२४. उनले भने, "(त्यसको) ज्ञान केवल अल्लाहलाई प्राप्त छ । तथा जुन कुराहरूका साथ मलाई पठाइएको छ म तिनै कुराहरू तिमीहरूसमक्ष पुऱ्याउँछु, परन्तु मेरा दृष्टिमा तिमीहरू (अति) मूर्ख व्यक्तिहरू रहेका छौ ।"

فَلَمَّا رَأَوْهُ عَارِضًا مُّسْتَقْبِلَ أَوْدِيَتِهِمْ قَالُوا هَٰذَا عَارِضٌ مُّمْطِرُنَا بَلْ هُوَ مَا اسْتَعْجَلْتُم بِهِۦ رِيحٌ فِيهَا عَذَابٌ أَلِيمٌ ﴿٢٤﴾

२५. त्यसपछि जब तिनीहरूले त्यसलाई एउटा बादलस्वरूप तिनीहरूको उपत्यकातर्फ अग्रसर हुँदै गरको देखे, तब तिनीहरूले भने, "त्यो ता एउटा बादल हो जसले हामीमाथि पानी बर्साउनेछ ।" होइन, अपितु यो त्यही वस्तु हो जसको शीघ्र आगमनको तिमीहरू कामना गर्थ्यौं– एउटा यस्तो आँधी जसमा एउटा ठूलो दण्ड (निहित) छ ।

تُدَمِّرُ كُلَّ شَيْءٍ بِأَمْرِ رَبِّهَا فَأَصْبَحُوا لَا يُرَىٰٓ إِلَّا مَسَٰكِنُهُمْ كَذَٰلِكَ نَجْزِي الْقَوْمَ الْمُجْرِمِينَ ﴿٢٥﴾

२६. "त्यसले आफ्ना प्रतिपालकको आदेशद्वारा हरेक वस्तुलाई ध्वस्त पार्नेछ ।" फलस्वरूप तिनीहरू यस्तो अवस्थामा पुगे (अर्थात्), त्यहाँ तिनीहरूका घरहरूबाहेक अन्य केही वस्तु देख्न पाइँदैनथ्यो । यसैप्रकार, हामी दोषी मानिसहरूलाई प्रतिदान दिने गर्छौं ।

وَلَقَدْ مَكَّنَّٰهُمْ فِيمَآ إِن مَّكَّنَّٰكُمْ فِيهِ وَجَعَلْنَا لَهُمْ سَمْعًا وَأَبْصَٰرًا وَأَفْـِٔدَةً

२७. तथा हामीले तिनीहरूलाई ती वस्तुहरूद्वारा प्रतिष्ठित तुल्याएका थियौं जुन वस्तुहरूद्वारा हामीले तिमीहरूलाई प्रतिष्ठित

فَمَآ اَغۡنٰى عَنۡهُمۡ سَمۡعُهُمۡ وَلَآ اَبۡصَارُهُمۡ وَلَآ اَفۡـِٕدَتُهُمۡ مِّنۡ شَىۡءٍ اِذۡ كَانُوۡا يَجۡحَدُوۡنَ ۙ بِاٰيٰتِ اللّٰهِ وَحَاقَ بِهِمۡ مَّا كَانُوۡا بِهٖ يَسۡتَهۡزِءُوۡنَ ﴿۲۷﴾

तुल्याएका छैनौं, तथा हामीले तिनीहरूलाई कान, आँखा र हृदय प्रदान गरेका थियौं परन्तु तिनीहरूका कान, आँखा र हृदयले तिनीहरूलाई कुनै लाभ पुऱ्याएनन् र निरन्तर तिनीहरू अल्लाहका चिह्नहरूलाई अस्वीकार गर्दै गए, फलस्वरूप जुन कुराको तिनीहरू ठट्टा उडाउने गर्थे त्यसैले तिनीहरूलाई घेरी छाड्यो ।

وَلَقَدۡ اَهۡلَكۡنَا مَا حَوۡلَكُمۡ مِّنَ الۡقُرٰى وَصَرَّفۡنَا الۡاٰيٰتِ لَعَلَّهُمۡ يَرۡجِعُوۡنَ ﴿۲۸﴾

२८. तथा तिमीहरूका चौतर्फी रहेका सबै नगरहरूलाई हामीले ध्वस्त पारिसकेका छौं, तथा हामीले स्पष्ट रूपमा चिह्नहरू वर्णन गरिदिएका छौं, ताकि तिनीहरू (हामीतर्फ) झुकून् ।

فَلَوۡلَا نَصَرَهُمُ الَّذِيۡنَ اتَّخَذُوۡا مِنۡ دُوۡنِ اللّٰهِ قُرۡبَانًا اٰلِهَةً ؕ بَلۡ ضَلُّوۡا عَنۡهُمۡ ۚ وَذٰلِكَ اِفۡكُهُمۡ وَمَا كَانُوۡا يَفۡتَرُوۡنَ ﴿۲۹﴾

२९. जसलाई तिनीहरूले अल्लाहबाहेक आफ्ना उपास्य तुल्याएका थिए, ताकि (तिनीहरूद्वारा) उनीहरूलाई (उनको) सान्निध्य प्राप्त हुन सकोस्, अत: किन तिनीहरूले उनीहरूलाई सहयोग गरेनन् त? होइन, (अपितु) तिनीहरू उनीहरूका दृष्टिबाट अदृश्य हुन पुगे । यही नै तिनीहरूको मिथ्या र बनावटी कुराहरू (को परिणाम) थियो ।

وَاِذۡ صَرَفۡنَاۤ اِلَيۡكَ نَفَرًا مِّنَ الۡجِنِّ يَسۡتَمِعُوۡنَ الۡقُرۡاٰنَ ۚ فَلَمَّا حَضَرُوۡهُ قَالُوۡۤا اَنۡصِتُوۡا ۚ فَلَمَّا قُضِىَ وَلَّوۡا اِلٰى قَوۡمِهِمۡ مُّنۡذِرِيۡنَ ﴿۳۰﴾

३०. तथा (त्यस समयको स्मरण गर) जब हामीले जिन्नहरूको एउटा समूहलाई तिमीतर्फ लिएर आएका थियौं जसले कुरान सुन्न चाहन्थ्यो, तथा जब तिनीहरू त्यसको (पाठ हुँदै गरेको) मौकामा उपस्थित भए, तिनीहरूले (परस्पर एक अर्कालाई) भने, "मौन धारण गर, (र सुन), " तथा जब त्यसको पाठ समाप्त भयो, तिनीहरू आफ्ना मानिसहरूतर्फ (उनीहरूलाई) सावधान गर्नका निम्ति फर्किए ।

३१. तिनीहरूले भने, "हे, हाम्रा मानिसहरू हो, हामीले यस्तो एउटा पुस्तक (को कुरा) सुन्यौं जुन मूसापछि अवतीर्ण गरिएको छ र त्यसअघिका कुराहरूलाई पूर्ण गर्छ, त्यसले सत्यतर्फ मार्ग प्रदर्शन गर्छ, तथा सन्मार्ग देखाउँछ ।

قَالُوا يٰقَوْمَنَآ إِنَّا سَمِعْنَا كِتٰبًا أُنْزِلَ مِنْ بَعْدِ مُوسٰى مُصَدِّقًا لِّمَا بَيْنَ يَدَيْهِ يَهْدِيٓ إِلَى الْحَقِّ وَإِلٰى طَرِيقٍ مُّسْتَقِيمٍ ﴿٣١﴾

३२. हे हाम्रा मानिसहरू हो, अल्लाहतर्फ आह्वान गर्ने व्यक्तिको कुरा सुन र उनीप्रति विश्वास गर । उनले तिमीहरूको पाप क्षमा गरिदिनेछन्, तथा तिमीहरूलाई पीडादायक दण्डबाट बचाउने छन् ।

يٰقَوْمَنَآ أَجِيبُوا دَاعِيَ اللّٰهِ وَأٰمِنُوا بِهِۦ يَغْفِرْ لَكُمْ مِّنْ ذُنُوبِكُمْ وَيُجِرْكُمْ مِّنْ عَذَابٍ أَلِيمٍ ﴿٣٢﴾

३३. "तथा जसले अल्लाहका आह्वानकर्ताको कुरो सुन्दैन, त्यो व्यक्ति पृथ्वीमा (उनीबाट) भाग्न सक्दैन, न त उनीबाहेक उसलाई कोही संरक्षक नै प्राप्त हुनेछ । त्यस्ता व्यक्तिहरू स्पष्टरूपमा पथभ्रष्ट हुन पुग्छन् ।"

وَمَنْ لَّا يُجِبْ دَاعِيَ اللّٰهِ فَلَيْسَ بِمُعْجِزٍ فِي الْأَرْضِ وَلَيْسَ لَهُۥ مِنْ دُونِهِۦٓ أَوْلِيَآءُ أُولٰٓئِكَ فِي ضَلٰلٍ مُّبِينٍ ﴿٣٣﴾

३४. जसले आकाशमण्डल र पृथ्वीको सिर्जना गरे र तिनीहरूको सिर्जनाबाट क्लान्त भएनन्, ती (अल्लाह)मा मुर्दाहरूलाई जीवित गर्ने सामर्थ्य रहेको छ भन्ने कुरा तिनीहरूले देखेका छैनन् र? निस्सन्देह, सम्पूर्ण कुराहरूमाथि उनी पूर्ण सामर्थ्यवान रहेका छन् ।

أَوَلَمْ يَرَوْا أَنَّ اللّٰهَ الَّذِي خَلَقَ السَّمٰوٰتِ وَالْأَرْضَ وَلَمْ يَعْيَ بِخَلْقِهِنَّ بِقٰدِرٍ عَلٰىٓ أَنْ يُّحْـِۧيَ الْمَوْتٰى بَلٰىٓ إِنَّهُۥ عَلٰى كُلِّ شَيْءٍ قَدِيرٌ ﴿٣٤﴾

३५. तथा त्यसदिन जब ती अविश्वासी व्यक्तिहरूलाई अग्निसमक्ष उपस्थित गरिनेछ, (तब तिनीहरूलाई के भनिनेछ भने), "के यही सत्य होइन र?" तिनीहरूले भन्नेछन्, "हाम्रा प्रतिपालकको शपथ, यही नै हो ।" उनले भन्नेछन्, "त्यसोभए आफ्नो अविश्वासका कारण दण्डको स्वाद चाख ।"

وَيَوْمَ يُعْرَضُ الَّذِينَ كَفَرُوا عَلَى النَّارِ أَلَيْسَ هٰذَا بِالْحَقِّ قَالُوا بَلٰى وَرَبِّنَا قَالَ فَذُوقُوا الْعَذَابَ بِمَا كُنْتُمْ تَكْفُرُونَ ﴿٣٥﴾

فَاصْبِرْ كَمَا صَبَرَ أُولُوا الْعَزْمِ مِنَ الرُّسُلِ وَلَا تَسْتَعْجِلْ لَّهُمْ ۚ كَأَنَّهُمْ يَوْمَ يَرَوْنَ مَا يُوعَدُونَ لَمْ يَلْبَثُوا إِلَّا سَاعَةً مِّن نَّهَارٍ ۚ بَلَاغٌ ۚ فَهَلْ يُهْلَكُ إِلَّا الْقَوْمُ الْفَاسِقُونَ ﴿٣٦﴾

३६. अतः जसरी दृढ सङ्कल्प सन्देशवाहकहरूले धैर्यधारण गरेका थिए त्यसरी नै तिमी पनि धैर्यधारण गर, तथा तिनीहरूका सम्बन्धमा हतार नगर । त्यसदिन जब तिनीहरूले आफूलाई वचन दिइएको कुरालाई देख्नेछन्, तब तिनीहरूको (अवस्था) यस्तो हुनेछ मानौं तिनीहरू संसारमा केवल (एक) दिनको केही घडी रहेका थिए । (यो चेतावनी) दिइ- सकिएको छ । तथा अवज्ञाकारी व्यक्तिहरू- बाहेक अन्य कसैलाई विनाश गरिनेछैन ।

سُوْرَةُ مُحَمَّدٍ مَدَنِيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ تِسْعٌ وَّثَلٰثُوْنَ اٰيَةً وَّاَرْبَعَةُ رُكُوْعَاتٍ

## मुहम्मद
(हिजरतपछि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ① —

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा।

اَلَّذِيْنَ كَفَرُوْا وَصَدُّوْا عَنْ سَبِيْلِ اللّٰهِ اَضَلَّ اَعْمَالَهُمْ ②

२. ती व्यक्तिहरू जसले अविश्वास गर्छन् तथा (मानिसहरूलाई) अल्लाहको मार्गबाट रोक्छन्– उनले तिनीहरूका कार्यहरूलाई व्यर्थ तुल्याउँछन्।

وَالَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ وَاٰمَنُوْا بِمَا نُزِّلَ عَلٰى مُحَمَّدٍ وَّهُوَ الْحَقُّ مِنْ رَّبِّهِمْ ۙ كَفَّرَ عَنْهُمْ سَيِّاٰتِهِمْ وَاَصْلَحَ بَالَهُمْ ③

३. परन्तु जसले विश्वास गर्छन् तथा पुण्यकार्य गर्छन् र जुन कुरा मुहम्मदप्रति अवतीर्ण गरिएको छ त्यसप्रति विश्वास गर्छन्– तथा यही नै तिनीहरूका प्रतिपालकका तर्फबाट नितान्त सत्य रहेको छ– उनले तिनीहरूबाट तिनीहरूका अवगुणहरू दूर गर्नेछन् तथा तिनीहरूको अवस्था सुधार्नेछन्।

ذٰلِكَ بِاَنَّ الَّذِيْنَ كَفَرُوا اتَّبَعُوا الْبَاطِلَ وَاَنَّ الَّذِيْنَ اٰمَنُوا اتَّبَعُوا الْحَقَّ مِنْ رَّبِّهِمْ ؕ كَذٰلِكَ يَضْرِبُ اللّٰهُ لِلنَّاسِ اَمْثَالَهُمْ ④

४. यसको कारण के हो भने, जसले अविश्वास गर्छन् तिनीहरूले मिथ्या कुराहरूको अनुसरण गर्छन् तर विश्वासीजनले भने त्यस सत्यको अनुसरण गर्छन्, जुन तिनीहरूका प्रतिपालकका तर्फबाट आएको छ। यसैप्रकार अल्लाहले तिनीहरूका सदृशताहरू मानिसहरूका निम्ति वर्णन गर्ने गर्छन्।

فَاِذَا لَقِيْتُمُ الَّذِيْنَ كَفَرُوْا فَضَرْبَ الرِّقَابِ ؕ حَتّٰى اِذَا اَثْخَنْتُمُوْهُمْ فَشُدُّوا الْوَثَاقَ ۙ فَاِمَّا مَنًّا بَعْدُ وَاِمَّا فِدَآءً حَتّٰى تَضَعَ الْحَرْبُ اَوْزَارَهَا ۚ ذٰ

५. तथा जब (नियमित लडाईंमा) तिमीहरूको भिडन्त अविश्वासीहरूसित हुन्छ तब (तिनीहरूको) गर्धन काट; तथा जब तिनीहरूमाथि तिमीहरूको कब्जा हुनेछ, दृढतापूर्वक तिनीहरूलाई बाँध– त्यसपछि चाहे तिनीहरूमाथि अनुग्रह गरी

ذٰلِكَ ۛ وَلَوْ يَشَآءُ اللّٰهُ لَانْتَصَرَ مِنْهُمْ وَلٰكِنْ لِّيَبْلُوَاۡ بَعْضَكُمْ بِبَعْضٍ ؕ وَالَّذِيْنَ قُتِلُوْا فِيْ سَبِيْلِ اللّٰهِ فَلَنْ يُّضِلَّ اَعْمَالَهُمْ ۝

(तिनीहरूलाई त्यसै छाडीदेऊ) अथवा हर्जाना (लिएर छाडिदेऊ)– जबसम्म युद्धले आफ्नो भारी बिसाउँदैन (अर्थात् युद्ध पर्णरूपमा नरोकिएसम्म) । यही (विशेषाज्ञा) रहेको छ । तथा यदि अल्लाहले निश्चय गरेका भए, उनले तिनीहरूसित स्वयम् प्रतिशोध लिन सक्ने थिए, परन्तु उनले तिमीहरूमध्ये केहीलाई अन्य केहीद्वारा जाँच्ने गर्छन् । तथा जुन व्यक्तिहरू अल्लाहको मार्गमा मारिन्छन्– उनले तिनीहरूका कार्यहरूलाई कदापि व्यर्थ जान दिनेछैनन् ।

سَيَهْدِيْهِمْ وَيُصْلِحُ بَالَهُمْ ۝

६. उनले तिनीहरूलाई मार्ग देखाउने छन् तथा तिनीहरूको अवस्था सुधार्नेछन् ।

وَيُدْخِلُهُمُ الْجَنَّةَ عَرَّفَهَا لَهُمْ ۝

७. तथा तिनीहरूलाई त्यस बगैंचामा दाखिल गर्नेछन् जसलाई उनले तिनीहरूका निम्ति सुन्दर र विशिष्ट तुल्याएका छन् ।

يٰۤاَيُّهَا الَّذِيْنَ اٰمَنُوْۤا اِنْ تَنْصُرُوا اللّٰهَ يَنْصُرْكُمْ وَيُثَبِّتْ اَقْدَامَكُمْ ۝

८. हे विश्वासीजन हो ! यदि तिमीहरूले अल्लाहको (उद्देश्य) मा सहयोग पुऱ्याएमा उनले तिमीहरूको सहयोग गर्नेछन् र तिमीहरूका कदमहरूलाई दृढ तुल्याउनेछन्

وَالَّذِيْنَ كَفَرُوْا فَتَعْسًا لَّهُمْ وَاَضَلَّ اَعْمَالَهُمْ ۝

९. परन्तु जसले अविश्वास गर्छन्, तिनीहरूको (भाग) भने विनाश हुनजान्छ; तथा उनले तिनीहरूका कार्यहरूलाई व्यर्थ तुल्याउनेछन् ।

ذٰلِكَ بِاَنَّهُمْ كَرِهُوْا مَاۤ اَنْزَلَ اللّٰهُ فَاَحْبَطَ اَعْمَالَهُمْ ۝

१०. यस्तो किन हुनेछ भने, अल्लाहले अवतीर्ण गरेका कुरालाई तिनीहरूले अवहेलना गरे; त्यसकारण उनले पनि तिनीहरूका कार्यहरूलाई निष्फल तुल्याएका छन् ।

اَفَلَمْ يَسِيْرُوْا فِي الْاَرْضِ فَيَنْظُرُوْا كَيْفَ كَانَ عَاقِبَةُ الَّذِيْنَ مِنْ قَبْلِهِمْ ؕ دَمَّرَ

११. के तिनीहरूले पृथ्वीमा परिभ्रमण गरी तिनीहरूभन्दा पहिला रहेका मानिसहरूको

اللّٰهُ عَلَيۡهِمۡ ز وَ لِلۡكٰفِرِيۡنَ اَمۡثَالُهَا ﴿١٠﴾

कस्तो परिणाम भएको थियो भन्ने कुरा देखेका छैनन्? अल्लाहले तिनीहरूलाई (पूर्णरूपमा) विनाश गरेका थिए, तथा अविश्वासी व्यक्तिहरूको पनि त्यस्तै परिणाम हुनेछ ।

ذٰلِكَ بِاَنَّ اللّٰهَ مَوۡلَى الَّذِيۡنَ اٰمَنُوۡا وَ اَنَّ الۡكٰفِرِيۡنَ لَا مَوۡلٰى لَهُمۡ ﴿١١﴾

११. यसको कारण के हो भने, अल्लाह विश्वासी- जनका संरक्षक रहेका छन्, तथा अविश्वासी व्यक्तिहरूको भने कोही संरक्षक छैन ।

اِنَّ اللّٰهَ يُدۡخِلُ الَّذِيۡنَ اٰمَنُوۡا وَ عَمِلُوا الصّٰلِحٰتِ جَنّٰتٍ تَجۡرِيۡ مِنۡ تَحۡتِهَا الۡاَنۡهٰرُ ؕ وَ الَّذِيۡنَ كَفَرُوۡا يَتَمَتَّعُوۡنَ وَ يَاۡكُلُوۡنَ كَمَا تَاۡكُلُ الۡاَنۡعَامُ وَ النَّارُ مَثۡوًى لَّهُمۡ ﴿١٢﴾

१२. जसले विश्वास गर्छन् र पुण्यकार्य गर्छन् तिनीहरूलाई अल्लाहले निश्चयपूर्वक यस्ता बगैंचाहरूमा दाखिल गर्नेछन् जसमनि नदीहरू बगिरहेछन्; परन्तु जसले अविश्वास गर्छन् तिनीहरूले भने क्षणिक आनन्द उपभोग गर्नेछन् र चौपायाहरूलेभैं खानेछन्, तथा अग्नि नै तिनीहरूको ठेगाना हुनेछ ।

وَ كَاَيِّنۡ مِّنۡ قَرۡيَةٍ هِيَ اَشَدُّ قُوَّةً مِّنۡ قَرۡيَتِكَ الَّتِيۡۤ اَخۡرَجَتۡكَ ۚ اَهۡلَكۡنٰهُمۡ فَلَا نَاصِرَ لَهُمۡ ﴿١٣﴾

१३. तथा कति यस्ता नगरहरू तिमीलाई निष्कासित गर्ने तिम्रो त्यो नगर भन्दा अधिक दृढ थिए, हामीले ध्वस्त तुल्यायौं, तथा तिनीहरूको कोही सहयोगी हुन सकेन

اَفَمَنۡ كَانَ عَلٰى بَيِّنَةٍ مِّنۡ رَّبِّهٖ كَمَنۡ زُيِّنَ لَهٗ سُوۡٓءُ عَمَلِهٖ وَ اتَّبَعُوۡۤا اَهۡوَآءَهُمۡ ﴿١٤﴾

१४. अत: जो व्यक्ति आफ्ना प्रतिपालकका तर्फबाट प्राप्त स्पष्ट प्रमाणहरूमा कायम छ, के त्यो व्यक्ति ती व्यक्तिहरू सदृश हुनसक्छ जसलाई तिनीहरूका दुष्कार्यहरू सुन्दर तुल्याएर देखाइएका छन् तथा जसले आफ्ना कु-मनोवाञ्छाहरूको अनुसरण गर्छन्?

مَثَلُ الۡجَنَّةِ الَّتِيۡ وُعِدَ الۡمُتَّقُوۡنَ ؕ فِيۡهَاۤ اَنۡهٰرٌ مِّنۡ مَّآءٍ غَيۡرِ اٰسِنٍ ۚ وَ اَنۡهٰرٌ مِّنۡ لَّبَنٍ لَّمۡ يَتَغَيَّرۡ طَعۡمُهٗ ۚ وَ اَنۡهٰرٌ مِّنۡ

१५. धर्मनिष्ठ व्यक्तिहरूसित जुन बगैंचाको बाचा गरिएको छ त्यसको विवरण यस्तो रहेको छ : त्यहाँ यस्ता नदीहरू हुनेछन् जसको पानी कहिल्यै अशुद्ध हुनेछैन; तथा कहिल्यै स्वाद परिवर्तन

خَمْرٍ لَّذَّةٍ لِّلشّٰرِبِيْنَ ۚ وَ اَنْهٰرٌ مِّنْ عَسَلٍ مُّصَفًّى ؕ وَ لَهُمْ فِيْهَا مِنْ كُلِّ الثَّمَرٰتِ وَ مَغْفِرَةٌ مِّنْ رَّبِّهِمْ ؕ كَمَنْ هُوَ خَالِدٌ فِى النَّارِ وَ سُقُوْا مَآءً حَمِيْمًا فَقَطَّعَ اَمْعَآءَهُمْ ﴿١٥﴾

नहुने दूधका नदीहरू र पिउने व्यक्तिहरूलाई स्वादिष्ट लाग्ने मदिराका नदीहरू तथा पवित्र महका नदीहरू पनि त्यहाँ हुनेछन् । तथा त्यहाँ तिनीहरूलाई सम्पूर्ण (प्रकारका) फलहरू प्राप्त हुनेछन्, तथा तिनीहरूका प्रतिपालकका तर्फबाट क्षमादानसमेत । के (यस्ता अनुग्रहहरूका उपभोगी व्यक्तिहरू) सदा अग्निमा रहेने त्यस्ता व्यक्तिहरूसदृश हुन सक्छन्, जसलाई पिउनका निम्ति उम्लदो तातोपानी दिइनेछ ताकि त्यसले तिनीहरूका आँतहरू काटोस्?

وَ مِنْهُمْ مَّنْ يَّسْتَمِعُ اِلَيْكَ ۚ حَتّٰۤى اِذَا خَرَجُوْا مِنْ عِنْدِكَ قَالُوْا لِلَّذِيْنَ اُوْتُوا الْعِلْمَ مَاذَا قَالَ اٰنِفًا ۫ اُولٰٓئِكَ الَّذِيْنَ طَبَعَ اللّٰهُ عَلٰى قُلُوْبِهِمْ وَ اتَّبَعُوْۤا اَهْوَآءَهُمْ ﴿١٦﴾

१७. तथा तिनीहरूमध्ये केही यस्ता व्यक्तिहरू छन् जसले तिम्रा कुराहरू सुन्छन्, अतः जब तिनीहरू तिमीबाट टाढा जान्छन तब ज्ञानप्राप्त व्यक्तिहरूसित के भन्छन् भने, "त्यसले अहिले के भन्दै थियो?" यी व्यक्तिहरू नै तिनीहरू हुन् जसको हृदयमा अल्लाहले मोहर लगाएका छन्, तथा यिनीहरू आफ्नै कु-मनोवाञ्छाको अनुसरण गर्छन् ।

وَ الَّذِيْنَ اهْتَدَوْا زَادَهُمْ هُدًى وَّ اٰتٰىهُمْ تَقْوٰىهُمْ ﴿١٧﴾

१८. परन्तु जसले मार्गदर्शनको अनुसरण गर्छन्, उनले तिनीहरूलाई त्यस मार्गमा उन्नति प्रदान गर्दै जान्छन्, तथा तिनीहरूलाई उनीहरूको धर्मनिष्ठता प्रदान गर्छन् ।

فَهَلْ يَنْظُرُوْنَ اِلَّا السَّاعَةَ اَنْ تَاْتِيَهُمْ بَغْتَةً ۚ فَقَدْ جَآءَ اَشْرَاطُهَا ۚ فَاَنّٰى لَهُمْ اِذَا جَآءَتْهُمْ ذِكْرٰىهُمْ ﴿١٨﴾

१९. तिनीहरू केवल त्यो निर्णायक घडी तिनीहरूसमक्ष अकस्मात आओस् भनी प्रतीक्षारत छन् । त्यसका चिह्नहरू भने प्रकट भइसकेका छन् । परन्तु जब तिनीहरूमाथि (वास्तवमै) त्यसको आगमन हुनेछ तब तिनीहरूका उपदेशले उनीहरूलाई के (लाभ) दिन सक्छ र?

فَاعْلَمْ اَنَّهٗ لَآ اِلٰهَ اِلَّا اللّٰهُ وَ اسْتَغْفِرْ لِذَنْۢبِكَ وَ لِلْمُؤْمِنِيْنَ وَ الْمُؤْمِنٰتِ ؕ وَاللّٰهُ يَعْلَمُ مُتَقَلَّبَكُمْ وَمَثْوٰىكُمْ ﴿٢٠﴾

२०. अतः अल्लाहबाहेक अन्य कोही उपास्य छैन भनी जान, तथा आफ्ना दुर्बलताहरूका निम्ति र विश्वासी पुरुष र विश्वासी महिलाहरूका निम्ति क्षमायाचना गर । तथा तिमीहरूले परिभ्रमण गर्ने र तिमीहरूले स्थिर रहने स्थानलाई अल्लाहले जान्दछन् ।

وَيَقُوْلُ الَّذِيْنَ اٰمَنُوْا لَوْ لَا نُزِّلَتْ سُوْرَةٌ ۚ فَاِذَآ اُنْزِلَتْ سُوْرَةٌ مُّحْكَمَةٌ وَّ ذُكِرَ فِيْهَا الْقِتَالُ ۙ رَاَيْتَ الَّذِيْنَ فِيْ قُلُوْبِهِمْ مَّرَضٌ يَّنْظُرُوْنَ اِلَيْكَ نَظَرَ الْمَغْشِيِّ عَلَيْهِ مِنَ الْمَوْتِ ؕ فَاَوْلٰى لَهُمْ ﴿٢١﴾

२१. तथा विश्वासीजनहरू के भन्छन् भने, "किन कुनै सुरः (परिच्छेद) अवतीर्ण हुँदैन त?" परन्तु जब कुनै निर्णायक सुरः (परिच्छेद) अवतीर्ण हुन्छ र त्यसमा युद्धबारे वर्णन हुन्छ, तब ती हृदयमा रोग हुने व्यक्तिहरूले तिमीतर्फ एउटा मृत्युको छाँया आफूमाथि परेको हुनाले स्तम्भित (भयभीत) भएको व्यक्तिले हेरेझैं हेर्दैगरेको तिमीले देख्नेछौ । अतः तिनीहरूका विनाश होस् ।

طَاعَةٌ وَّ قَوْلٌ مَّعْرُوْفٌ ۟ فَاِذَا عَزَمَ الْاَمْرُ ۟ فَلَوْ صَدَقُوا اللّٰهَ لَكَانَ خَيْرًا لَّهُمْ ﴿٢٢﴾

२२. आज्ञाकारिता र नैतिक वचन नै (तिनीहरूका निम्ति उत्तम रहेको छ) । तथा जब कुनै विषयमा दृढतापूर्वक निर्णय हुन्छ, (तब) यदि तिनीहरू अल्लाहको दृष्टिमा सत्य साबित भएमा तिनीहरूका निम्ति उत्तम रहनेछ ।

فَهَلْ عَسَيْتُمْ اِنْ تَوَلَّيْتُمْ اَنْ تُفْسِدُوْا فِي الْاَرْضِ وَ تُقَطِّعُوْٓا اَرْحَامَكُمْ ﴿٢٣﴾

२३. अतः यदि तिमीहरूलाई अधिकार प्राप्त भएमा के तिमीहरू पृथ्वमिा अशान्ति सिर्जना र नातेदारीका सम्बन्धहरू विच्छेद गर्नेछैनौ त?

اُولٰٓئِكَ الَّذِيْنَ لَعَنَهُمُ اللّٰهُ فَاَصَمَّهُمْ وَ اَعْمٰٓى اَبْصَارَهُمْ ﴿٢٤﴾

२४. यी तिनीहरू नै हुन् जसलाई अल्लाहले अभिशापित गरेका छन् फलस्वरूप उनले तिनीहरूलाई बहिरा बनाएका छन् तथा तिनीहरूका नेत्रहरूलाई अन्धा तुल्याएका छन् ।

أَفَلَا يَتَدَبَّرُونَ الْقُرْآنَ أَمْ عَلَىٰ قُلُوبٍ أَقْفَالُهَا ﴿٢٤﴾

२५. अत: के तिनीहरू कुरानप्रति ध्यान दिँदैनन् अथवा के तिनीहरूका हृदयमा आफैले (बनाएर लगाएका) ताल्चाहरू रहेका छन् त?

إِنَّ الَّذِينَ ارْتَدُّوا عَلَىٰ أَدْبَارِهِم مِّن بَعْدِ مَا تَبَيَّنَ لَهُمُ الْهُدَى ۙ الشَّيْطَانُ سَوَّلَ لَهُمْ وَأَمْلَىٰ لَهُمْ ﴿٢٥﴾

२६. निश्चय नै, मार्गदर्शन स्पष्टरूपमा प्रकट भएपश्चात् जसले आफ्नो पिठ्यूँ फेर्ने गर्छन् शैतानले तिनीहरूलाई धोकाग्रस्त तुल्याएको छ र तिनीहरूलाई मिथ्या आशाहरू देखाएको छ ।

ذَٰلِكَ بِأَنَّهُمْ قَالُوا لِلَّذِينَ كَرِهُوا مَا نَزَّلَ اللَّهُ سَنُطِيعُكُمْ فِي بَعْضِ الْأَمْرِ ۖ وَاللَّهُ يَعْلَمُ إِسْرَارَهُمْ ﴿٢٦﴾

२७. यसको कारण के हो भने, जुन व्यक्तिहरू अल्लाहले अवतीर्ण गरेका कुराहरूलाई घृणा गर्छन् तिनीहरूलाई यिनीहरूले (के) भनेका थिए (भने), "केही मामिलाहरूमा हामी तिमीहरूको अनुसरण गर्नेछौं," तथा तिनीहरूका (गुप्त) भेदहरूलाई अल्लाहले जान्दछन् ।

فَكَيْفَ إِذَا تَوَفَّتْهُمُ الْمَلَائِكَةُ يَضْرِبُونَ وُجُوهَهُمْ وَأَدْبَارَهُمْ ﴿٢٧﴾

२८. परन्तु जब देवदूतहरूले तिनीहरूका मुहार र पिठ्यूँमा प्रहार गर्दै तिनीहरूलाई मृत्यु प्रदान गर्नेछन् तब (तिनीहरूको) के (अवस्था) होला त?

ذَٰلِكَ بِأَنَّهُمُ اتَّبَعُوا مَا أَسْخَطَ اللَّهَ وَكَرِهُوا رِضْوَانَهُ فَأَحْبَطَ أَعْمَالَهُمْ ﴿٢٨﴾

२९. यस्तो किन हुनेछ भने, तिनीहरूले अल्लाहले नरुचाएका कुराको अनुसरण गरे तथा जुन कुराले उनी प्रसन्न हुन्थे त्यसलाई तिनीहरूले अवहेलना गरे । अत: उनले तिनीहरूका कार्यहरू व्यर्थ तुल्याए ।

أَمْ حَسِبَ الَّذِينَ فِي قُلُوبِهِم مَّرَضٌ أَن لَّن يُخْرِجَ اللَّهُ أَضْغَانَهُمْ ﴿٢٩﴾

३०. जसका हृदयमा रोग रहेको छ के अल्लाहले तिनीहरूको कपट प्रकाशमा ल्याउनेछैनन् भनी तिनीहरू ठान्छन् त?

وَلَوْ نَشَاءُ لَأَرَيْنَاكَهُمْ فَلَعَرَفْتَهُم بِسِيمَاهُمْ ۚ وَلَتَعْرِفَنَّهُمْ فِي لَحْنِ الْقَوْلِ ۚ وَاللَّهُ يَعْلَمُ أَعْمَالَكُمْ ﴿٣٠﴾

३१. तथा यदि हामीले चाहेमा तिनीहरूलाई तिमीसमक्ष प्रकट गर्न सक्छौं, ताकि तिनीहरूका चिह्नहरूद्वारा तिमीले तिनीहरूलाई चिन्न सक । तथा

तिनीहरूलाई तिमी निश्चयपूर्वक (तिनीहरूको) बोल्ने ढङ्गबाट चिन्छौ । तथा तिमीहरूका कार्यहरूलाई अल्लाहले जान्दछन् ।

وَلَنَبْلُوَنَّكُمْ حَتّٰى نَعْلَمَ الْمُجٰهِدِيْنَ مِنْكُمْ وَ الصّٰبِرِيْنَ ۙ وَ نَبْلُوَا۠ اَخْبَارَكُمْ ۝

३२. तथा तिमीहरूमध्ये साँच्चा संघर्षकारी तथा धैर्यधारी व्यक्तिहरूलाई जबसम्म हामी जान्नेछेनौं (तबसम्म) तिमीहरूलाई अवश्य जाँच्दै रहने छौं । तथा हामी त्यस (जाँचद्वारा) तिमीहरूको वास्तविक मोल प्रकट गर्नेछौं ।

اِنَّ الَّذِيْنَ كَفَرُوْا وَ صَدُّوْا عَنْ سَبِيْلِ اللّٰهِ وَ شَآقُّوا الرَّسُوْلَ مِنْ بَعْدِ مَا تَبَيَّنَ لَهُمُ الْهُدٰى ۙ لَنْ يَّضُرُّوا اللّٰهَ شَيْـًٔا ؕ وَ سَيُحْبِطُ اَعْمَالَهُمْ ۝

३३. जसले अविश्वास गर्छन् तथा (मानिसहरूलाई) अल्लाहको मार्गबाट रोक्छन्, तथा तिनीहरूसमक्ष मार्गदर्शन स्पष्ट भएपश्चात् (पनि) सन्देशवाहकको विरोध गर्छन् तिनीहरूले अल्लाहको कुनै हानि गर्न सक्नेछैनन्; तथा उनले तिनीहरूका कार्यहरूलाई निष्फल तुल्याउनेछन् ।

يٰۤاَيُّهَا الَّذِيْنَ اٰمَنُوْۤا اَطِيْعُوا اللّٰهَ وَ اَطِيْعُوا الرَّسُوْلَ وَ لَا تُبْطِلُوْۤا اَعْمَالَكُمْ ۝

३४. हे विश्वासीजन हो ! अल्लाह र सन्देशवाहकको अनुसरण गर तथा आफ्ना कार्यहरूलाई व्यर्थ नतुल्याऊ ।

اِنَّ الَّذِيْنَ كَفَرُوْا وَ صَدُّوْا عَنْ سَبِيْلِ اللّٰهِ ثُمَّ مَاتُوْا وَ هُمْ كُفَّارٌ فَلَنْ يَّغْفِرَ اللّٰهُ لَهُمْ ۝

३५. निश्चय नै, जसले अविश्वास गर्छन् तथा (मानिसहरूलाई) अल्लाहको मार्गबाट रोक्छन् (तथा) तिनीहरू अविश्वासी रहेकै अवस्थामा मर्छन्– अल्लाहले तिनीहरूलाई कदापि क्षमा गर्नेछैनन् ।

فَلَا تَهِنُوْا وَ تَدْعُوْۤا اِلَى السَّلْمِ ۖۗ وَ اَنْتُمُ الْاَعْلَوْنَ ۖۗ وَ اللّٰهُ مَعَكُمْ وَ لَنْ يَّتِرَكُمْ اَعْمَالَكُمْ ۝

३६. अत: अल्छी (शिथिल) नबन अन्यथा तिमीहरूले सन्धिको आग्रह गर्नेछौ; जबकि तिमीहरूका निम्ति विजय निश्चित रहेको छ । तथा अल्लाह तिमीहरूकै साथमा रहेका छन् र उनले तिमीहरूलाई तिमीहरूका कार्यहरूको प्रतिफलबाट

वञ्चित गर्नेछैनन् ।

إِنَّمَا الْحَيٰوةُ الدُّنْيَا لَعِبٌ وَّ لَهْوٌ ۭ وَاِنْ تُؤْمِنُوْا وَ تَتَّقُوْا يُؤْتِكُمْ اُجُوْرَكُمْ وَ لَا يَسْـَٔلْكُمْ اَمْوَالَكُمْ ﴿٣٦﴾

३७. (यस) संसारको जीवन ता केवल एउटा क्रीडा तथा मनोरञ्जनस्वरूप रहेको छ, तथा यदि तिमीहरूले विश्वास गऱ्यौ र धर्मनिष्ठ बन्यौ भने, उनले तिमीहरूलाई तिमीहरूको प्रतिदान प्रदान गर्नेछन्, तथा तिमीहरूबाट तिमीहरूको सम्पत्ति माग्नेछैनन् ।

اِنْ يَّسْـَٔلْكُمُوْهَا فَيُحْفِكُمْ تَبْخَلُوْا وَ يُخْرِجْ اَضْغَانَكُمْ ﴿٣٧﴾

३८. यदि उनले तिमीहरूबाट ती वस्तुहरू मागेमा र तिमीहरूलाई दबाव दिएमा, तिमीहरूले कृपणता अवलम्बन गर्न सक्छौ, तथा उनले तिमीहरूको कपट भाव अवश्य प्रकाशमा ल्याउनेछन् ।

هٰۤاَنْتُمْ هٰۤؤُلَآءِ تُدْعَوْنَ لِتُنْفِقُوْا فِيْ سَبِيْلِ اللّٰهِ ۚ فَمِنْكُمْ مَّنْ يَّبْخَلُ ۚ وَ مَنْ يَّبْخَلْ فَاِنَّمَا يَبْخَلُ عَنْ نَّفْسِهٖ ۭ وَ اللّٰهُ الْغَنِيُّ وَ اَنْتُمُ الْفُقَرَآءُ ۚ وَ اِنْ تَتَوَلَّوْا يَسْتَبْدِلْ قَوْمًا غَيْرَكُمْ ۙ ثُمَّ لَا يَكُوْنُوْۤا اَمْثَالَكُمْ ﴿٣٨﴾

३९. सुन, तिमीहरू नै ती व्यक्तिहरू हौ जसलाई अल्लाहको मार्गमा खर्च गर्नका निम्ति आह्वान गरिएकोछ; परन्तु तिमीहरूमध्ये केही व्यक्तिहरू भने कृपण रहेका छन् । तथा जो कृपण छ, उसले आफ्नै आत्माविरुद्ध कृपणता अवलम्बन गर्छ । तथा अल्लाह आत्मनिर्भरशील रहेका छन् र तिमीहरू भने अभावग्रस्त रहेका छौ तथा यदि तिमीहरूले आफ्नो पिठ्यूँ (अर्कोतिर) फर्काएमा उनले तिमीहरूको स्थानमा एउटा अर्कै जातिलाई खडा गर्नेछन्, तथा तिनीहरू तिमीहरूसदृश हुनेछैनन् ।

سُوْرَةُ الْفَتْحِ مَدَنِيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ ثَلٰثُوْنَ اٰيَةً وَّاَرْبَعُ رُكُوْعَاتٍ

## अल्-फत्ह
(हिजरतपछि अवतरित)

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

२. निःस्सन्देह, हामीले तिमीलाई एउटा स्पष्ट विजय प्रदान गरेका छौं,

اِنَّا فَتَحْنَا لَكَ فَتْحًا مُّبِيْنًا ②

३. ताकि अल्लाहले तिम्रा अतीत र भविष्यका त्रुटिहरू ढाकून् तथा उनले तिमीमाथि आफ्नो अनुग्रह पूर्ण गरून्, तथा तिमीलाई सन्मार्गमा हिंडाउन्;

لِّيَغْفِرَ لَكَ اللّٰهُ مَا تَقَدَّمَ مِنْ ذَنْۢبِكَ وَمَا تَاَخَّرَ وَيُتِمَّ نِعْمَتَهٗ عَلَيْكَ وَيَهْدِيَكَ صِرَاطًا مُّسْتَقِيْمًا ③

४. तथा अल्लाहले तिम्रो ठूलो सहयोग गरून् ।

وَّيَنْصُرَكَ اللّٰهُ نَصْرًا عَزِيْزًا ④

५. ती उनी नै हुन् जसले विश्वासीजनका हृदयमा शान्ति अवतीर्ण गरे ताकि तिनीहरूको विश्वासमाथि झन् विश्वास थपियोस् तथा आकाशमण्डल र पृथ्वीका लस्करहरू अल्लाहकै रहेका छन्, तथा अल्लाह सर्वज्ञ, तत्वज्ञ छन्–

هُوَ الَّذِيْٓ اَنْزَلَ السَّكِيْنَةَ فِيْ قُلُوْبِ الْمُؤْمِنِيْنَ لِيَزْدَادُوْٓا اِيْمَانًا مَّعَ اِيْمَانِهِمْ ؕ وَلِلّٰهِ جُنُوْدُ السَّمٰوٰتِ وَالْاَرْضِ ؕ وَكَانَ اللّٰهُ عَلِيْمًا حَكِيْمًا ⑤

६. ताकि उनले विश्वासी पुरुष र विश्वासी महिलालाई यस्ता बगैंचाहरमा दाखिल गरून् जसमनि नहरहरू बग्ने गर्छन्, जहाँ तिनीहरू सदा रहनेछन् तथा उनले तिनीहरूबाट तिनीहरूका त्रुटिहरू निवारण गर्नेछन्– तथा अल्लाहका दृष्टिमा त्यही नै ठूलो कृतकार्यता रहेको छ ।

لِّيُدْخِلَ الْمُؤْمِنِيْنَ وَالْمُؤْمِنٰتِ جَنّٰتٍ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ خٰلِدِيْنَ فِيْهَا وَيُكَفِّرَ عَنْهُمْ سَيِّاٰتِهِمْ ؕ وَكَانَ ذٰلِكَ عِنْدَ اللّٰهِ فَوْزًا عَظِيْمًا ⑥

७. ताकि उनले ढोंगी पुरुषहरू र ढोंगी महिलाहरूलाई तथा ती मूर्तिपुजक पुरुषहरू र मूर्तिपूजक महिलाहरूलाई जसले अल्लाहका सम्बन्धमा कु-भावनाहरू पोषण

وَّيُعَذِّبَ الْمُنٰفِقِيْنَ وَالْمُنٰفِقٰتِ وَالْمُشْرِكِيْنَ وَالْمُشْرِكٰتِ الظَّآنِّيْنَ بِاللّٰهِ

ظَنَّ السَّوْءِ ۚ عَلَيْهِمْ دَائِرَةُ السَّوْءِ ۖ وَغَضِبَ اللَّهُ عَلَيْهِمْ وَلَعَنَهُمْ وَأَعَدَّ لَهُمْ جَهَنَّمَ ۖ وَسَاءَتْ مَصِيرًا ﴿٦﴾

गर्छन्, दण्ड दिउन् । तिनीहरूविरुद्ध नै दुर्भाग्यको पाङ्ग्रो घुम्नेछ, तथा अल्लाहको अभिशाप तिनीहरूमाथि पर्नेछ । तथा उनले तिनीहरूलाई लाञ्छित गरेका छन् र तिनीहरूका निम्ति नर्क तयार पारेका छन् । तथा त्यो निस्सन्देह एउटा निकृष्ट गन्तव्य स्थान रहेको छ ।

وَلِلَّهِ جُنُودُ السَّمَاوَاتِ وَالْأَرْضِ ۚ وَكَانَ اللَّهُ عَزِيزًا حَكِيمًا ﴿٧﴾

८. तथा आकाशमण्डल र पृथ्वीका लस्करहरू अल्लाहकै रहेका छन्; तथा अल्लाह परम पराक्रमी परम तत्वज्ञ छन् ।

إِنَّا أَرْسَلْنَاكَ شَاهِدًا وَمُبَشِّرًا وَنَذِيرًا ﴿٨﴾

९. हामीले तिमीलाई एकजना साक्षी र शुभसन्देशवाहक तथा सावधानकर्तास्वरूप पठाएका छौं,

لِتُؤْمِنُوا بِاللَّهِ وَرَسُولِهِ وَتُعَزِّرُوهُ وَتُوَقِّرُوهُ ۚ وَتُسَبِّحُوهُ بُكْرَةً وَأَصِيلًا ﴿٩﴾

१०. ताकि तिमीहरू अल्लाह र उनका सन्देशवाहकप्रति विश्वास गर, तथा उनलाई सहयोग गर र उनको सम्मान गर, तथा बिहानी र बेलुकी उनको (अल्लाहको) गुणगान गर ।

إِنَّ الَّذِينَ يُبَايِعُونَكَ إِنَّمَا يُبَايِعُونَ اللَّهَ يَدُ اللَّهِ فَوْقَ أَيْدِيهِمْ ۚ فَمَنْ نَكَثَ فَإِنَّمَا يَنْكُثُ عَلَىٰ نَفْسِهِ ۖ وَمَنْ أَوْفَىٰ بِمَا عَاهَدَ عَلَيْهُ اللَّهَ فَسَيُؤْتِيهِ أَجْرًا عَظِيمًا ﴿١٠﴾

११. वस्तुतः जसले तिम्रो अनुगमनको शपथ खान्छन् तिनीहरूले अल्लाहको अनुगमनको शपथ खान्छन् । तिनीहरूका हातमाथि अल्लाहको हात रहेको छ । अतः जसले (आफ्नो प्रतिज्ञा) तोड्छ (त्यसलाई) तोडेर उसले आफ्नै हानि गर्नेछ; तथा जसले अल्लाहसित आफूले गरेको प्रतिज्ञालाई पूर्ण गर्छ, उनले अवश्य त्यस व्यक्तिलाई महान प्रतिदान प्रदान गर्नेछन् ।

سَيَقُولُ لَكَ الْمُخَلَّفُونَ مِنَ الْأَعْرَابِ شَغَلَتْنَا أَمْوَالُنَا وَأَهْلُونَا فَاسْتَغْفِرْ لَنَا ۚ يَقُولُونَ بِأَلْسِنَتِهِمْ مَا لَيْسَ فِي قُلُوبِهِمْ ۚ قُلْ فَمَنْ يَمْلِكُ لَكُمْ مِنَ اللَّهِ شَيْئًا إِنْ أَرَادَ بِكُمْ ضَرًّا أَوْ أَرَادَ بِكُمْ نَفْعًا ۚ بَلْ كَانَ اللَّهُ بِمَا

१२. अरबका गाउँका निवासीहरूमध्ये जसलाई पछाडी छाडीएको थियो तिनीहरूले अवश्य तिमीसित के भन्नेछन् भने, "हाम्रो सम्पत्ति तथा हाम्रा परिवारले हामीलाई व्यस्त राखेका थिए, त्यसकारण हाम्रा निम्ति क्षमायाचना

تَعْمَلُوْنَ خَبِيْرًا ⑪

गर ।" तिनीहरू आफ्ना हृदयमा नरहेको कुरो मुखले भन्छन् । तिमी भन, "यदि उनले तिमीहरूको हानि गर्ने, अथवा तिमीहरूलाई कुनै लाभ पुऱ्याउने इच्छा गरेमा कसले अल्लाहविरुद्ध तिमीहरूका निम्ति केही गर्न सक्छ र? होइन, (अपितु) तिमीहरूका सम्पूर्ण कियाकलापहरूप्रति अल्लाह पूर्ण अवगत रहेका छन् ।

بَلْ ظَنَنْتُمْ اَنْ لَّنْ يَّنْقَلِبَ الرَّسُوْلُ وَالْمُؤْمِنُوْنَ اِلٰٓى اَهْلِيْهِمْ اَبَدًا وَّ زُيِّنَ ذٰلِكَ فِيْ قُلُوْبِكُمْ وَ ظَنَنْتُمْ ظَنَّ السَّوْءِ ۚۖ وَكُنْتُمْ قَوْمًۢا بُوْرًا ⑫

१२. होइन, (अपितु) सन्देशवाहक र विश्वासीजन कदापि आफ्ना परिवारतर्फ फर्केर आउनेछैनन् भनी तिमीहरूले ठानेका थियौ, तथा तिमीहरूका हृदयमा त्यस कुरालाई सुन्दर (तुल्याएर) देखाइएको थियो तथा तिमीहरूले एउटा अति निकृष्ट सोच (मनमा) पालेका थियौ, तथा तिमीहरू विनाश हुने मानिसहरू थियौ ।

وَمَنْ لَّمْ يُؤْمِنْۢ بِاللّٰهِ وَرَسُوْلِهٖ فَاِنَّآ اَعْتَدْنَا لِلْكٰفِرِيْنَ سَعِيْرًا ⑬

१४. तथा जसले अल्लाह र उनका सन्देशवाहकप्रति विश्वास गर्दैनन् त्यस्ता अविश्वासी व्यक्तिहरूका निम्ति भने हामीले निश्चितरूपमा एउटा प्रज्वलित अग्नि तयार पारेका छौं ।

وَلِلّٰهِ مُلْكُ السَّمٰوٰتِ وَالْاَرْضِ ۭ يَغْفِرُ لِمَنْ يَّشَاۗءُ وَيُعَذِّبُ مَنْ يَّشَاۗءُ ۭ وَكَانَ اللّٰهُ غَفُوْرًا رَّحِيْمًا ⑭

१५. तथा आकाशमण्डल र पृथ्वीको राज्य अल्लाहकै रहेको छ । उनले जसलाई इच्छ्ना गर्छ् क्षमा प्रदान गर्छन्, तथा जसलाई इच्छा गर्छन् दण्ड दिन्छन् । तथा अल्लाह परम क्षमाशील, परम करुणाशील छन् ।

سَيَقُوْلُ الْمُخَلَّفُوْنَ اِذَا انْطَلَقْتُمْ اِلٰى مَغَانِمَ لِتَاْخُذُوْهَا ذَرُوْنَا نَتَّبِعْكُمْ ۚ يُرِيْدُوْنَ اَنْ يُّبَدِّلُوْا كَلٰمَ اللّٰهِ ۭ قُلْ لَّنْ تَتَّبِعُوْنَا كَذٰلِكُمْ قَالَ اللّٰهُ مِنْ قَبْلُ ۚ فَسَيَقُوْلُوْنَ بَلْ تَحْسُدُوْنَنَا ۭ بَلْ كَانُوْا لَا يَفْقَهُوْنَ اِلَّا قَلِيْلًا ⑮

१६. जब तिमीहरू युद्धमा प्राप्त सम्पत्ति एकत्रित गर्न अघि बढ्छौ तब ती पछि (छाडिए) का मानिसहरूले (के) भन्नेछन् (भने), "हामीलाई पनि तिमीहरूका पछि लाग्ने अनुमति देऊ ।" तिनीहरू अल्लाहको आदेशलाई परिवर्तन गर्न चाहन्छन् । तिमी भन, "तिमीहरू हाम्रा पछि लाग्न सक्दैनौ । यसअघि नै अल्लाहको आज्ञा भइसकेको छ।"

त्यसपछि तिनीहरूले (के) भन्नेछन् (भनें), "होइन, अपितु तिमीहरू हाम्रो डाहा गर्छौ ।" त्यसो होइन, अपितु तिनीहरू पटकै बुझ्दैनन्

قُلْ لِّلْمُخَلَّفِيْنَ مِنَ الْاَعْرَابِ سَتُدْعَوْنَ
اِلٰى قَوْمٍ اُولِيْ بَاْسٍ شَدِيْدٍ تُقَاتِلُوْنَهُمْ اَوْ
يُسْلِمُوْنَ ۚ فَاِنْ تُطِيْعُوْا يُؤْتِكُمُ اللّٰهُ
اَجْرًا حَسَنًا ۚ وَ اِنْ تَتَوَلَّوْا كَمَا
تَوَلَّيْتُمْ مِّنْ قَبْلُ يُعَذِّبْكُمْ عَذَابًا
اَلِيْمًا ﴿١٧﴾

१७. पछाडी छाडिएका अरबका ग्रामीणहरूलाई भन, "तिमीहरूलाई एउटा ठूलो योद्धा जातिविरुद्ध (युद्ध गर्नका निम्ति) आह्वान गरिनेछ; तिनीहरूले आत्मसमर्पण नगरुञ्जेलसम्म तिमीहरू तिनीहरूसित लडाइँ गर्नेछौ । त्यसपछि, यदि तिमीहरू आज्ञाकारी भयौ भने, अल्लाहले तिमीहरूलाई एउटा उत्तम प्रतिदान प्रदान गर्नेछन्, परन्तु यदि तिमीहरूले पहिले पिठ्यूँ फेरेझैँ आफ्नो पिठ्यूँ फर्कायौ भने उनले तिमीहरूलाई एउटा पीडादायक दण्ड दिनेछन् ।

لَيْسَ عَلَى الْاَعْمٰى حَرَجٌ وَّ لَا عَلَى
الْاَعْرَجِ حَرَجٌ وَّ لَا عَلَى الْمَرِيْضِ حَرَجٌ ۗ
وَ مَنْ يُّطِعِ اللّٰهَ وَ رَسُوْلَهٗ يُدْخِلْهُ
جَنّٰتٍ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ ۚ وَ
مَنْ يَّتَوَلَّ يُعَذِّبْهُ عَذَابًا اَلِيْمًا ﴿١٨﴾ ع

१८. (यदि युद्धका निम्ति प्रस्थान नगरेमा) अन्धामाथि दोष लाग्नेछैन, न लंगडामाथि, न त विरामीमाथि नै दोष लाग्नेछ । तथा जसले अल्लाह र उनका सन्देशवाहकको आज्ञापालन गर्छ, उनले त्यसलाई यस्ता बगैँचामा दाखिल गर्नेछन् जसमनि नहरहरू बग्ने गर्छन्; परन्तु जसले आफ्नो पिठ्यूँ फर्काउँछ, त्यसलाई भने उनले ठूलो दण्ड दिनेछन् ।

لَقَدْ رَضِيَ اللّٰهُ عَنِ الْمُؤْمِنِيْنَ اِذْ
يُبَايِعُوْنَكَ تَحْتَ الشَّجَرَةِ فَعَلِمَ
مَا فِيْ قُلُوْبِهِمْ فَاَنْزَلَ السَّكِيْنَةَ
عَلَيْهِمْ وَ اَثَابَهُمْ فَتْحًا قَرِيْبًا ﴿١٩﴾

१९. निश्चय नै, अल्लाह विश्वासीजनबाट त्यस समय अति प्रसन्न भए जब तिनीहरू वृक्षमनि तिम्रो अनुगमनको शपथ लिइरहेका थिए, तथा तिनीहरूका हृदयमा रहेका कुराहरूलाई उनले जाने, र उनले तिनीहरूमाथि शान्ति अवतीर्ण गरे, तथा उनले तिनीहरूलाई प्रतिदानस्वरूप निकट भविष्यमा प्राप्त हुने विजय प्रदान गरे,

وَّ مَغَانِمَ كَثِيْرَةً يَّاْخُذُوْنَهَا ۗ وَ
كَانَ اللّٰهُ عَزِيْزًا حَكِيْمًا ﴿٢٠﴾

२०. तथा (युद्धमा प्राप्त हुने) ठूलो धन-सम्पत्ति (प्रदान गरे) जुन तिनीहरूले प्राप्त

गर्नेछन् । तथा अल्लाह परम पराक्रमी, परम तत्वज्ञ रहेका छन् ।

وَعَدَكُمُ اللّٰهُ مَغَانِمَ كَثِيْرَةً تَأْخُذُوْنَهَا فَعَجَّلَ لَكُمْ هٰذِهٖ وَ كَفَّ اَيْدِيَ النَّاسِ عَنْكُمْ ۚ وَلِتَكُوْنَ اٰيَةً لِّلْمُؤْمِنِيْنَ وَ يَهْدِيَكُمْ صِرَاطًا مُّسْتَقِيْمًا ﴿٢١﴾

२१. अल्लाहले तिमीहरूसित ठूलो धन-सम्पत्तिको बाचा गरेका छन् जुन तिमीहरूले प्राप्त गर्नेछौ, तथा यो उनले तिमीहरूलाई अग्रिम सम्पत्तिको रूपमा प्रदान गरेका हुन्, तथा तिमीहरूबाट मानिसहरूका हात रोकर राखेका छन्, ताकि यो कुरो विश्वासीजनका निम्ति एउटा चिह्नस्वरूप होस् तथा उनले तिमीहरूलाई (त्यसद्वारा) सन्मार्गमा हिँडाउन्

وَّ اُخْرٰى لَمْ تَقْدِرُوْا عَلَيْهَا قَدْ اَحَاطَ اللّٰهُ بِهَا ۚ وَكَانَ اللّٰهُ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرًا ﴿٢٢﴾

२२. तथा (उनले) एउटा अर्को (विजयको तिमीहरूसित बाचा गरेका छन्) जुन तिमीहरूलाई अहिलेसम्म प्राप्त भएको छैन, परन्तु अल्लाहले भने निश्चय नै त्यसलाई आफ्नो कब्जामा लिइसकेका छन् । तथा सम्पूर्ण वस्तुहरूमाथि अल्लाह पूर्ण सामर्थ्यवान रहेका छन् ।

وَ لَوْ قٰتَلَكُمُ الَّذِيْنَ كَفَرُوْا لَوَلَّوُا الْاَدْبَارَ ثُمَّ لَا يَجِدُوْنَ وَلِيًّا وَّ لَا نَصِيْرًا ﴿٢٣﴾

२३. तथा यदि अविश्वासीहरूले तिमीहरूसित लडाइँ गरेका भए, तिनीहरू अवश्य आफ्नो पिठ्यूँ देखाएर भाग्ने थिए, त्यसपछि न तिनीहरूले कोही संरक्षक पाउने थिए न त कोही सहयोगी नै ।

سُنَّةَ اللّٰهِ الَّتِيْ قَدْ خَلَتْ مِنْ قَبْلُ ۚ وَ لَنْ تَجِدَ لِسُنَّةِ اللّٰهِ تَبْدِيْلًا ﴿٢٤﴾

२४. अल्लाहको त्यही नै निश्चित आचरण रहेको छ जुन पहिलादेखि नै (चल्दै आएको) छ, तथा अल्लाहको निश्चित आचरणमा तिमीले कदापि कुनै परिवर्तन पाउनेछैनौ ।

وَهُوَ الَّذِيْ كَفَّ اَيْدِيَهُمْ عَنْكُمْ وَاَيْدِيَكُمْ عَنْهُمْ بِبَطْنِ مَكَّةَ مِنْۢ بَعْدِ اَنْ اَظْفَرَكُمْ عَلَيْهِمْ ؕ وَكَانَ اللّٰهُ بِمَا تَعْمَلُوْنَ بَصِيْرًا ﴿٢٤﴾

२५. तथा ती उनी नै हुन् जसले तिनीहरूमाथि तिमीहरूलाई विजय प्रदान गरेपश्चात् मक्काको उपत्यकामा तिमीहरूबाट उनीहरूका हात र उनीहरूबाट तिमीहरूका हात रोकेर राखे । तथा तिमीहरूका सम्पूर्ण कार्यहरूलाई अल्लाहले देखिरहेछन् ।

هُمُ الَّذِيْنَ كَفَرُوْا وَصَدُّوْكُمْ عَنِ الْمَسْجِدِ الْحَرَامِ وَالْهَدْيَ مَعْكُوْفًا اَنْ يَّبْلُغَ مَحِلَّهٗ ؕ وَلَوْلَا رِجَالٌ مُّؤْمِنُوْنَ وَنِسَآءٌ مُّؤْمِنٰتٌ لَّمْ تَعْلَمُوْهُمْ اَنْ تَطَئُوْهُمْ فَتُصِيْبَكُمْ مِّنْهُمْ مَّعَرَّةٌۢ بِغَيْرِ عِلْمٍ ۚ لِيُدْخِلَ اللّٰهُ فِيْ رَحْمَتِهٖ مَنْ يَّشَآءُ ۚ لَوْ تَزَيَّلُوْا لَعَذَّبْنَا الَّذِيْنَ كَفَرُوْا مِنْهُمْ عَذَابًا اَلِيْمًا ﴿٢٥﴾

२६. ती उनीहरू नै थिए जसले अविश्वास गरे, र तिमीहरूलाई पवित्र मस्जिद(मा जान)बाट रोके तथा बलिलाई त्यसको बलि दिने स्थानसम्म पुग्न दिएनन् । तथा यदि त्यहाँ केही यस्ता विश्वासी पुरुषहरू र विश्वासी महिलाहरू, जसलाई तिमीहरू जान्दैनथ्यौ, नरहेका भए तथा तिमीहरूले अज्ञानतावश तिनीहरूलाई आफ्ना पाउमनि कुल्चने थियौ फलस्वरूप तिनीहरूका कारण तिमीहरूमाथि दोष लाग्ने थियो भन्ने आशङ्का नरहेको भए (उनले अवश्य तिमीहरूलाई युद्ध गर्ने अनुमति दिने थिए, परन्तु उनले त्यसो गरेनन्) ताकि जसलाई उनले चाहन्छन् त्यसलाई अल्लाहले आफ्नो करुणा अन्तर्गत गरून् । यदि तिनीहरू (अविश्वासीहरूबाट) पृथक गरिएका भए, तिनीहरूमध्ये ती अविश्वासीहरूलाई हामी अवश्य पीडादायक दण्डबाट दण्डित गर्ने थियौं ।

اِذْ جَعَلَ الَّذِيْنَ كَفَرُوْا فِيْ قُلُوْبِهِمُ الْحَمِيَّةَ حَمِيَّةَ الْجَاهِلِيَّةِ فَاَنْزَلَ اللّٰهُ سَكِيْنَتَهٗ عَلٰى رَسُوْلِهٖ وَعَلَى الْمُؤْمِنِيْنَ وَاَلْزَمَهُمْ كَلِمَةَ التَّقْوٰى وَكَانُوْٓا اَحَقَّ بِهَا وَاَهْلَهَا ؕ وَكَانَ اللّٰهُ بِكُلِّ شَيْءٍ عَلِيْمًا ﴿٢٦﴾

२७. जब ती अविश्वासी व्यक्तिहरूले अज्ञानपूर्ण (दिनहरूको) द्वेषभावसदृश अहङ्कारपूर्ण द्वेषभाव (क्रोधभाव) आफ्ना हृदयमा पोषण गरेका थिए, अल्लाहले आफ्नो जुनाफबाट आफ्ना सन्देशवाहक तथा विश्वासीजनमाथि शान्ति अवतीर्ण गरे, तथा तिनीहरूलाई धर्मनिष्ठताको वचनप्रति (दृढरुपमा) एकत्रित गरे, तथा तिनीहरू

त्यसका अधिक हकदार र त्यसका अधिक योग्य पनि थिए । तथा अल्लाहले हरेक कुरालाई अति नै राम्ररी जान्दछन् ।

لَقَدْ صَدَقَ اللّٰهُ رَسُوْلَهُ الرُّءْيَا بِالْحَقِّ ۚ لَتَدْخُلُنَّ الْمَسْجِدَ الْحَرَامَ اِنْ شَآءَ اللّٰهُ اٰمِنِيْنَ ۙ مُحَلِّقِيْنَ رُءُوْسَكُمْ وَمُقَصِّرِيْنَ ۙ لَا تَخَافُوْنَ ؕ فَعَلِمَ مَا لَمْ تَعْلَمُوْا فَجَعَلَ مِنْ دُوْنِ ذٰلِكَ فَتْحًا قَرِيْبًا ﴿٢٧﴾

२८. अल्लाहले निश्चय नै आफ्ना सन्देशवाहकका निम्ति त्यस (अलौकिक) दृश्यलाई सत्यमा परिणत गरेर देखाए । यदि अल्लाहको इच्छा रहेमा तिमीहरू निश्चयपूर्वक (केही व्यक्तिहरू) पूर्णरूपमा (आफ्नो) कपाल काटेर र (अन्य केही भने आफ्नो) कपाल छोट्याएर सुरक्षितरूपमा पवित्र मस्जिदमा प्रवेश गर्नेछौ, (तथा) तिमीहरूलाई कुनै प्रकारको भय हुनेछैन । परन्तु उनले त्यो कुरो जाने जुन कुराको तिमीहरूलाई ज्ञान थिएन । उनले वास्तवमा त्यसबाहेक तिमीहरूलाई निकट भविष्यमा प्राप्त हुने एउटा अर्को विजय निर्धारण गरेका छन् ।

هُوَ الَّذِيْٓ اَرْسَلَ رَسُوْلَهٗ بِالْهُدٰى وَدِيْنِ الْحَقِّ لِيُظْهِرَهٗ عَلَى الدِّيْنِ كُلِّهٖ ؕ وَكَفٰى بِاللّٰهِ شَهِيْدًا ﴿٢٨﴾

२९. ती उनी नै हुन् जसले आफ्ना सन्देशवाहकलाई मार्गदर्शन र साँचो धर्मका साथ पठाएका छन्, ताकि उनले त्यसलाई (अन्य सम्पूर्ण) धर्महरूमाथि विजय तुल्याउन् । तथा साक्षीस्वरूप अल्लाह नै पर्याप्त रहेका छन् ।

مُحَمَّدٌ رَّسُوْلُ اللّٰهِ ؕ وَالَّذِيْنَ مَعَهٗٓ اَشِدَّآءُ عَلَى الْكُفَّارِ رُحَمَآءُ بَيْنَهُمْ تَرٰىهُمْ رُكَّعًا سُجَّدًا يَّبْتَغُوْنَ فَضْلًا مِّنَ اللّٰهِ وَرِضْوَانًا ؗ سِيْمَاهُمْ فِيْ وُجُوْهِهِمْ مِّنْ اَثَرِ السُّجُوْدِ ؕ ذٰلِكَ مَثَلُهُمْ فِي التَّوْرٰىةِ ۖۛ وَمَثَلُهُمْ فِي

३०. मुहम्मद अल्लाहका सन्देशवाहक हुन् । तथा उनीसित रहेका ती व्यक्तिहरू अविश्वासीहरूविरुद्ध दृढ (कठोर) रहेका छन् भने परस्पर (एक-अर्काका) निम्ति कोमल हृदयी । तिनीहरूलाई तिमी अल्लाहको कृपा र उनको प्रसन्नताको कामना गर्दै झुक्दै

الْاِنْجِيْلِ ۚ كَزَرْعٍ اَخْرَجَ شَطْاَهٗ فَاٰزَرَهٗ فَاسْتَغْلَظَ فَاسْتَوٰى عَلٰى سُوْقِهٖ يُعْجِبُ الزُّرَّاعَ لِيَغِيْظَ بِهِمُ الْكُفَّارَ ۗ وَعَدَ اللّٰهُ الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ مِنْهُمْ مَّغْفِرَةً وَّاَجْرًا عَظِيْمًا ﴿٢٩﴾

(र), साष्टाङ्ग दण्डवत गर्दै (प्रार्थनामा व्यस्त) रहेको देख्छौ । तिनीहरूको परिचय तिनीहरूका मुहारमा दण्डवतको चिह्नद्वारा अङ्कित रहेको छ । तौरातमा तिनीहरूको यही विवरण रहेको छ । तथा इन्जिलमा तिनीहरूको के विवरण रहेको छ भने, तिनीहरू एउटा अन्नको यस्तो दानोसदृश हुनेछन् जसले पहिला आफ्नो टुसा बाहिर निकाल्छ, त्यसपछि त्यसलाई दृढ तुल्याउँछ, तब त्यो मोटो हुन्छ र आफ्नो मूलमा दृढतापूर्वक खडा हुनपुग्छ, जुन कृषकलाई अति मनपर्दो हुन्छ– फलस्वरूप तिनीहरूलाई (देखेर) अविश्वासी व्यक्तिहरू क्रोधाग्निमा जल्छन् । अल्लाहले तिनीहरूमध्ये विश्वास गर्ने र पुण्यकार्य गर्ने व्यक्तिहरूसित क्षमादान र महान प्रतिदानको बाचा गरेका छन् ।

سُوْرَةُ الْحُجُرَاتِ مَدَنِيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ تِسْعَ عَشْرَةَ اٰيَةً وَّرُكُوْعَانِ

अल्-हुजुरात
(हिजरतपछि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

يٰۤاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا لَا تُقَدِّمُوْا بَيْنَ يَدَيِ اللّٰهِ وَرَسُوْلِهٖ وَاتَّقُوا اللّٰهَ ؕ اِنَّ اللّٰهَ سَمِيْعٌ عَلِيْمٌ ②

२. हे विश्वासीजन हो ! अल्लाह र उनका सन्देशवाहकका सम्बन्धमा अघि बढेर (कुरा) नगर, परन्तु अल्लाहसित डराऊ । वस्तुतः अल्लाह सर्वस्रोता, सर्वज्ञ छन् ।

يٰۤاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا لَا تَرْفَعُوْۤا اَصْوَاتَكُمْ فَوْقَ صَوْتِ النَّبِيِّ وَلَا تَجْهَرُوْا لَهٗ بِالْقَوْلِ كَجَهْرِ بَعْضِكُمْ لِبَعْضٍ اَنْ تَحْبَطَ اَعْمَالُكُمْ وَاَنْتُمْ لَا تَشْعُرُوْنَ ③

३. हे विश्वासीजन हो ! नबीको बोलीभन्दा आफ्नो बोली उच्च नगर, तथा उनका सामुन्ने ठूलो स्वरमा त्यसरी नबोल जसरी तिमीहरू परस्पर एकआपसमा ठूलो स्वरमा बोल्ने गर्छौ, अन्यथा अज्ञानतावश तिमीहरूका कार्यहरू व्यर्थ हुन जानेछन् ।

اِنَّ الَّذِيْنَ يَغُضُّوْنَ اَصْوَاتَهُمْ عِنْدَ رَسُوْلِ اللّٰهِ اُولٰٓئِكَ الَّذِيْنَ امْتَحَنَ اللّٰهُ قُلُوْبَهُمْ لِلتَّقْوٰى ؕ لَهُمْ مَّغْفِرَةٌ وَّاَجْرٌ عَظِيْمٌ ④

४. वस्तुतः जसले अल्लाहका सन्देशवाहकका सामुन्ने आफ्नो बोली निम्न राख्ने गर्छन् तिनीहरू नै ती व्यक्तिहरू हुन् जसको हृदयलाई अल्लाहले जाँचेर धर्मपरायण तुल्याएका छन् । तिनीहरूका निम्ति क्षमादान र महान प्रतिदान (निर्धारित) रहेको छ ।

اِنَّ الَّذِيْنَ يُنَادُوْنَكَ مِنْ وَّرَآءِ الْحُجُرٰتِ اَكْثَرُهُمْ لَا يَعْقِلُوْنَ ⑤

५. निश्चय नै, ती व्यक्तिहरू जसले तिमीलाई (तिम्रो) निवासभन्दा टाढाबाटै ठूलो स्वरमा पुकार्छन् – तिनीहरूमध्ये अधिकतर व्यक्तिहरू अबुझ रहेका छन् ।

وَلَوْ اَنَّهُمْ صَبَرُوْا حَتّٰى تَخْرُجَ اِلَيْهِمْ لَكَانَ خَيْرًا لَّهُمْ ؕ وَاللّٰهُ غَفُوْرٌ رَّحِيْمٌ ⑥

६. तथा यदि तिनीहरूसमक्ष तिमी नआउन्जेलसम्म तिनीहरूले धैर्यतापूर्वक प्रतीक्षा गर्थे भने त्यो कार्य तिनीहरूका निम्ति उत्तम हुने थियो । परन्तु अल्लाह

परम क्षमाशील, परम करुणाशील छन् ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا إِن جَاءَكُمْ فَاسِقٌ بِنَبَإٍ فَتَبَيَّنُوا أَن تُصِيبُوا قَوْمًا بِجَهَالَةٍ فَتُصْبِحُوا عَلَىٰ مَا فَعَلْتُمْ نَادِمِينَ ⑥

७. हे विश्वासीजन हो ! यदि कुनै गैरनिष्ठावान व्यक्तिले तिमीहरूसमक्ष कुनै खबर ल्याएमा त्यसको (विवरणको सत्यताबारे) पूर्णरूपमा परीक्षण गर, अन्यथा अज्ञानतावश तिमीहरूले कुनै जातिको हानि गर्न पुग्नेछौ र आफूले गरेको कार्यप्रति पश्चाताप गर्नेछौ ।

وَاعْلَمُوا أَنَّ فِيكُمْ رَسُولَ اللَّهِ ۚ لَوْ يُطِيعُكُمْ فِي كَثِيرٍ مِّنَ الْأَمْرِ لَعَنِتُّمْ وَلَٰكِنَّ اللَّهَ حَبَّبَ إِلَيْكُمُ الْإِيمَانَ وَزَيَّنَهُ فِي قُلُوبِكُمْ وَكَرَّهَ إِلَيْكُمُ الْكُفْرَ وَالْفُسُوقَ وَالْعِصْيَانَ ۚ أُولَٰئِكَ هُمُ الرَّاشِدُونَ ⑦

८. तथा तिमीहरूका बीचमा अल्लाहका सन्देशवाहक रहेका छन् भनी जान, यदि अधिकतर मामिलाहरूमा उनले तिमीहरूको इच्छाअनुसार काम गरेमा तिमीहरू निश्चय नै सङ्कटमा पर्नेछौ, परन्तु अल्लाहले तिमीहरूका निम्ति आस्थालाई प्रिय तुल्याएका छन् तथा तिमीहरूका हृदयमा त्यसलाई सुन्दर (तुल्याएर) स्थापित गरेका छन्, तथा अविश्वास, दुष्टपना तथा अवज्ञालाई तिमीहरूका दृष्टिमा घृणित तुल्याएका छन् । यस्ता व्यक्तिहरू नै वास्तवमा सन्मार्गगामी रहेका छन् ।

فَضْلًا مِّنَ اللَّهِ وَنِعْمَةً ۚ وَاللَّهُ عَلِيمٌ حَكِيمٌ ⑧

९. अल्लाहको कृपा तथा अनुग्रहद्वारा । तथा अल्लाह सर्वज्ञ, तत्वज्ञ रहेका छन् ।

وَإِن طَائِفَتَانِ مِنَ الْمُؤْمِنِينَ اقْتَتَلُوا فَأَصْلِحُوا بَيْنَهُمَا ۖ فَإِن بَغَتْ إِحْدَاهُمَا عَلَى الْأُخْرَىٰ فَقَاتِلُوا الَّتِي تَبْغِي حَتَّىٰ تَفِيءَ إِلَىٰ أَمْرِ اللَّهِ ۚ فَإِن فَاءَتْ فَأَصْلِحُوا بَيْنَهُمَا بِالْعَدْلِ وَأَقْسِطُوا ۖ إِنَّ اللَّهَ يُحِبُّ الْمُقْسِطِينَ ⑨

१०. तथा यदि विश्वासीहरूका दुइवटा समूहहरू (एक अर्काविरुद्ध) लडेमा तिनीहरूका बीचमा सन्धि स्थापना गर, अतः यदि -त्यसपछि) तिनीहरूमध्ये एकले अर्कामाथि आक्रमण गरेमा त्यस आक्रमणकारी समूहसित तबसम्म युद्ध गर जबसम्म त्यो अल्लाहको आदेशतर्फ फर्केर आउँदैन । तयसपछि यदि त्यो समूह फर्किएमा, तिनीहरूका बीचमा न्यायकासाथ सन्धि गराऊ तथा न्यायपूर्वक कार्य गर । वस्तुतः अल्लाहले न्यायी व्यक्तिलाई मन

पराउँछन् ।

११. निश्चय नै (सबै) विश्वासीजन परस्पर दाजु भाइ रहेका छन् । त्यसकारण दुई भाइहरूका बीचमा सन्धि गराऊ, तथा अल्लाहप्रति डराऊ ताकि तिमीहरूमाथि करुणा गरियोस् ।

إِنَّمَا الْمُؤْمِنُوْنَ إِخْوَةٌ فَأَصْلِحُوْا بَيْنَ أَخَوَيْكُمْ وَاتَّقُوا اللّٰهَ لَعَلَّكُمْ تُرْحَمُوْنَ ﴿١٠﴾

१२. हे विश्वासीजन हो ! एक जातिले (अर्को) जातिको खिसी नउडाओस्, सम्भवत: तिनीहरू उनीहरूभन्दा उत्तम हुन सक्छन्, न त कुनै -जातिका) महिलाहरूले (अन्य जातिका) महिलाहरूको (खिसी उडाउन्), जुन सम्भवत: तिनीहरूभन्दा उत्तम हुन सक्छन् । तथा आफ्ना मानिसहरूलाई अपवाद नलगाऊ, न त परस्पर एक अर्कालाई उपनामद्वारा व्यंग्यपूर्वक बोलाउने गर । विश्वास(को घोषणा)पश्चात् दुर्नामी हुनु अति नराम्रो कुरो रहेको छ, तथा जसले प्रायश्चित गर्दैनन् तिनीहरू नै अत्याचारी हुन् ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا لَا يَسْخَرْ قَوْمٌ مِّنْ قَوْمٍ عَسٰٓى اَنْ يَّكُوْنُوْا خَيْرًا مِّنْهُمْ وَلَا نِسَآءٌ مِّنْ نِّسَآءٍ عَسٰٓى اَنْ يَّكُنَّ خَيْرًا مِّنْهُنَّ ۚ وَلَا تَلْمِزُوْٓا اَنْفُسَكُمْ وَلَا تَنَابَزُوْا بِالْاَلْقَابِ ۗ بِئْسَ الِاسْمُ الْفُسُوْقُ بَعْدَ الْاِيْمَانِ ۚ وَمَنْ لَّمْ يَتُبْ فَاُولٰٓئِكَ هُمُ الظّٰلِمُوْنَ ﴿١١﴾

१३. हे विश्वासीजन हो ! अधिकतर सन्देह (स्पद कुराहरू)बाट बच्ने गर, किनभने केही (कुराहरूमा) सन्देह (गर्नु) अवश्य पाप हुन्छ । तथा जासुसी नगर, न त परस्पर एक अर्काको चुक्ली नै गर्ने गर । के तिमीहरूमध्ये कोही आफ्नो मृत भाइको मासु खान रुचाउँछ र? निस्सन्देह तिमीहरू त्यसलाई घृणा गर्नेछौ । तथा अल्लाहसित डराऊ, अल्लाह निश्चय नै बारम्बार (अनुग्रहका पूर्वक) दृष्टि गर्ने तथा परम करुणाशील छन् ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوا اجْتَنِبُوْا كَثِيْرًا مِّنَ الظَّنِّ ۫ اِنَّ بَعْضَ الظَّنِّ اِثْمٌ وَّلَا تَجَسَّسُوْا وَلَا يَغْتَبْ بَّعْضُكُمْ بَعْضًا ۗ اَيُحِبُّ اَحَدُكُمْ اَنْ يَّاْكُلَ لَحْمَ اَخِيْهِ مَيْتًا فَكَرِهْتُمُوْهُ ۗ وَاتَّقُوا اللّٰهَ ۗ اِنَّ اللّٰهَ تَوَّابٌ رَّحِيْمٌ ﴿١٢﴾

१४. हे मानव जाति, हामीले तिमीहरूलाई पुरुष तथा स्त्री जातिबाट सृष्टि गरेका हौं, तथा हामीले तिमीहरूलाई (विभिन्न) जाति र वंशस्वरूप निर्माण गरेका छौं ताकि

يٰٓاَيُّهَا النَّاسُ اِنَّا خَلَقْنٰكُمْ مِّنْ ذَكَرٍ وَّاُنْثٰى وَجَعَلْنٰكُمْ شُعُوْبًا وَّقَبَآئِلَ لِتَعَارَفُوْا ۚ اِنَّ اَكْرَمَكُمْ عِنْدَ اللّٰهِ

أَتْقٰىكُمْ ۚ إِنَّ اللّٰهَ عَلِيْمٌ خَبِيْرٌ ﴿١٤﴾

तिमीहरू (परस्पर) एक अर्कालाई चिन्न (र जान्न) सक । वस्तुतः अल्लाहका दृष्टिमा तिमीहरूमध्ये सर्वाधिक सम्माननीय त्यही व्यक्ति रहेको छ जो तिमीहरूमध्ये सबैभन्दा अधिक धर्मनिष्ठ छ । अल्लाह निश्चय नै सर्वज्ञ, सर्वचेतनासम्पन्न रहेका छन् ।

قَالَتِ الْأَعْرَابُ اٰمَنَّا ۚ قُلْ لَّمْ تُؤْمِنُوْا وَلٰكِنْ قُوْلُوْٓا أَسْلَمْنَا وَلَمَّا يَدْخُلِ الْإِيْمَانُ فِيْ قُلُوْبِكُمْ ۚ وَإِنْ تُطِيْعُوا اللّٰهَ وَرَسُوْلَهٗ لَا يَلِتْكُمْ مِّنْ أَعْمَالِكُمْ شَيْـًٔا ۚ إِنَّ اللّٰهَ غَفُوْرٌ رَّحِيْمٌ ﴿١٥﴾

१५. ग्रामनिवासी अरबीहरू भन्छन्, हामीले विश्वास स्थापना गर्‍यौं ।" तिमी भन, "तिमीहरूले -अझै) विश्वास स्थापना गरेका छैनौ, बरु तिमीहरू के भन भने, "हामीले इस्लाम स्वीकार गरेका छौं, किनभने (वास्तविक) विश्वास अहिलेसम्म तिमीहरूको हृदयमा दाखिल भएको छैन ।" परन्तु यदि तिमीहरू अल्लाह र उनका सन्देशवाहकका आज्ञाकारी भयौ भने उनले तिमीहरूको कुनै कार्यलाई व्यर्थ जान दिनेछैनन् । निश्चय नै, अल्लाह परम क्षमाशील, परम करुणाशील छन् ।

إِنَّمَا الْمُؤْمِنُوْنَ الَّذِيْنَ اٰمَنُوْا بِاللّٰهِ وَرَسُوْلِهٖ ثُمَّ لَمْ يَرْتَابُوْا وَجَاهَدُوْا بِأَمْوَالِهِمْ وَأَنْفُسِهِمْ فِيْ سَبِيْلِ اللّٰهِ ۚ أُولٰٓئِكَ هُمُ الصّٰدِقُوْنَ ﴿١٦﴾

१६. केवल ती व्यक्तिहरू मात्र विश्वासी रहेका छन् जसले अल्लाहप्रति र उनका सन्देशवाहकप्रति (साँचो) विश्वास गर्छन्, र त्यसपछि कदापि शङ्का गर्दैनन्, अपितु आफ्नो सम्पत्ति र ज्यानका साथ अल्लाहको मार्गमा संघर्ष गर्छन् । यिनीहरू नै साँचा व्यक्तिहरू हुन् ।

قُلْ أَتُعَلِّمُوْنَ اللّٰهَ بِدِيْنِكُمْ ۚ وَاللّٰهُ يَعْلَمُ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْأَرْضِ ۚ وَاللّٰهُ بِكُلِّ شَيْءٍ عَلِيْمٌ ﴿١٧﴾

१७. तिमी भन, "के तिमीहरू अल्लाहलाई आफ्नो धर्म (निष्ठा)सित परिचित गराउन चाहन्छौ, वस्तुतः आकाशमण्डल र पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरूलाई अल्लाहले जान्दछन्, तथा सम्पूर्ण कुराहरूलाई अल्लाहले अति राम्ररी जान्दछन् ।"

يَمُنُّوْنَ عَلَيْكَ أَنْ أَسْلَمُوْا ۚ قُلْ لَّا تَمُنُّوْا عَلَيَّ إِسْلَامَكُمْ ۚ بَلِ اللّٰهُ يَمُنُّ عَلَيْكُمْ

१८. तिनीहरूले इस्लाम ग्रहण गरेर तिमीमाथि एउटा अनुग्रह गरेका छन् भनी तिनीहरू ठान्छन् । तिमी भन, "तिमीहरूले

أَنْ هَدٰىكُمْ لِلْإِيْمَانِ إِنْ كُنْتُمْ صٰدِقِيْنَ ﴿١٨﴾

इस्लाम ग्रहण गरी ममाथि उपकार गरेका छौ भनी नठान । त्यस विपरित यदि तिमीहरू (आफ्नो विश्वासी हुने दाबीमा) साँचा छौ भने, तिमीहरू नै ती व्यक्तिहरू हौ जसमाथि साँचो विश्वासतर्फ मार्गप्रदर्शन गरेर अल्लाहले अनुग्रह गरेका छन् ।"

إِنَّ اللّٰهَ يَعْلَمُ غَيْبَ السَّمٰوٰتِ وَالْأَرْضِ ۚ وَاللّٰهُ بَصِيْرٌۢ بِمَا تَعْمَلُوْنَ ﴿١٩﴾

ع

१९. निस्सन्देह, आकाशमण्डल र पृथ्वीका भेदहरू- लाई अल्लाहले जान्दछन् । तथा तिमीहरूका सबै कार्यहरूलाई अल्लाहले देखी रहेछन् ।

سُورَةُ قٓ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ سِتٌّ وَّاَرْبَعُوْنَ اٰيَةً وَّثَلٰثُ رُكُوْعَاتٍ

## काफ
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

قٓ ۚ وَالْقُرْاٰنِ الْمَجِيْدِ ②

२. काफ* । (हामी यस) गौरवशाली कुरान(लाई तिम्रो सत्यताको साक्षीस्वरुप प्रस्तुत गर्छौं) ।

بَلْ عَجِبُوْٓا اَنْ جَآءَهُمْ مُّنْذِرٌ مِّنْهُمْ فَقَالَ الْكٰفِرُوْنَ هٰذَا شَيْءٌ عَجِيْبٌ ③

३. परन्तु तिनीहरूसमक्ष तिनीहरू मध्येकै एउटा सावधानकर्ता आयो भनी तिनीहरू आश्चर्यित हुन्छन् । तथा अविश्वासीहरू के भन्छन् भने, "यो एउटा अति अचम्मको कुरा रहेको छ !

ءَاِذَا مِتْنَا وَكُنَّا تُرَابًا ۚ ذٰلِكَ رَجْعٌۢ بَعِيْدٌ ④

४. "के ! जब हामी मर्छौं र धूलो माटो बन्न पुग्छौं, (तब हामीलाई पुनर्जीवित गरी खडा गरिनेछ त)? त्यो पुनरागमन (सम्भवभन्दा) अति परको कुरो रहेको छ ।"

قَدْ عَلِمْنَا مَا تَنْقُصُ الْاَرْضُ مِنْهُمْ ۚ وَعِنْدَنَا كِتٰبٌ حَفِيْظٌ ⑤

५. तिनीहरूमध्ये कतिलाई पृथ्वीले घटाउँछ भन्ने कुरो हामी जान्दछौं तथा हामीसित एउटा यस्तो पुस्तक छ जसले (सम्पूर्ण कुराहरू) सुरक्षित राख्छ ।

بَلْ كَذَّبُوْا بِالْحَقِّ لَمَّا جَآءَهُمْ فَهُمْ فِيْٓ اَمْرٍ مَّرِيْجٍ ⑥

६. होइन, (अपितु) तिनीहरूले सत्यलाई आफूसमक्ष आएपश्चात् अस्वीकार गरे, त्यसकारण तिनीहरू एउटा सन्दिग्ध (अस्थिर) अवस्थामा रहेका छन् ।

اَفَلَمْ يَنْظُرُوْٓا اِلَى السَّمَآءِ فَوْقَهُمْ كَيْفَ بَنَيْنٰهَا وَزَيَّنّٰهَا وَمَا لَهَا مِنْ فُرُوْجٍ ⑦

७. के तिनीहरूले आफूमाथि रहेको आकाशलाई हामीले त्यसलाई कस्तो बनाएका छौं, र त्यसलाई कसरी सु-

* सर्वशक्तिसम्पन्न !

सज्जित तुल्याएका छौं, तथा त्यसमा कुनै छिद्रहरू रहेका छैनन् भन्ने कुरा देखेका छैनन् र?"

وَالْاَرْضَ مَدَدْنٰهَا وَاَلْقَيْنَا فِيْهَا رَوَاسِيَ وَاَنْۢبَتْنَا فِيْهَا مِنْ كُلِّ زَوْجٍۢ بَهِيْجٍ ۝٨

८. तथा त्यो पृथ्वी – हामीले त्यसलाई विस्तृत तुल्याएका छौं, तथा त्यसमा दृढ पर्वतहरू स्थापना गरेका छौं, तथा त्यहाँ हामीले हरेक (प्रकारका) सुन्दर (उद्भिदका) जातिहरू उब्जाएका छौं,

تَبْصِرَةً وَّذِكْرٰى لِكُلِّ عَبْدٍ مُّنِيْبٍ ۝٩

९. (अल्लाहतर्फ) झुक्ने हरेक भृत्यका निम्ति (यो) प्रकाश र उपदेश (को साधन) स्वरुप रहेको छ ।

وَنَزَّلْنَا مِنَ السَّمَآءِ مَآءً مُّبٰرَكًا فَاَنْۢبَتْنَا بِهٖ جَنّٰتٍ وَّحَبَّ الْحَصِيْدِ ۝١٠

१०. तथा आकाशबाट हामीले अनुकम्पापूर्ण पानी बर्साएका छौं, तथा त्यसद्वारा हामी बगैंचाहरू र काटेर एकत्रित गरिने अन्नहरू उत्पन्न गर्छौं,

وَالنَّخْلَ بٰسِقٰتٍ لَّهَا طَلْعٌ نَّضِيْدٌ ۝١١

११. तथा एक माथि अर्को गरी खापिएका फलका झुप्पायुक्त उच्च खजूरका वृक्षहरू,

رِّزْقًا لِّلْعِبَادِ ۙ وَاَحْيَيْنَا بِهٖ بَلْدَةً مَّيْتًا ؕ كَذٰلِكَ الْخُرُوْجُ ۝١٢

१२. (हाम्रा) सेवकहरूका निम्ति जीविकास्वरूप, तथा हामी त्यसद्वारा मृत (नगर) धर्तीलाई जीवित गर्छौं । पुनरुत्थान पनि यसैप्रकार हुनेछ ।

كَذَّبَتْ قَبْلَهُمْ قَوْمُ نُوْحٍ وَّاَصْحٰبُ الرَّسِّ وَثَمُوْدُ ۝١٣

१३. तिनीहरूभन्दा पहिला नूहका मानिसहरूले (सत्यलाई) अस्वीकार गरेका थिए तथा इनारका* निवासीहरू र समूद जातिले पनि (त्यसै गरेका थिए),

وَعَادٌ وَّفِرْعَوْنُ وَاِخْوَانُ لُوْطٍ ۝١٤

१४. तथा आद जाति, र फिरौनका मानिसहरू तथा लूतका भाइहरूले पनि,

وَّاَصْحٰبُ الْاَيْكَةِ وَقَوْمُ تُبَّعٍ ؕ كُلٌّ كَذَّبَ الرُّسُلَ فَحَقَّ وَعِيْدِ ﴿١٤﴾

१५. तथा जङ्गलका निवासीहरू* तथा तुब्बा जातिका* मानिसहरूले । तिनीहरू सबैले सन्देशवाहकहरूलाई अस्वीकार गरेका थिए त्यसकै फलस्वरूप मैले पूर्व चेतावनी दिएको दण्ड (तिनीहरूमाथि) बर्स्यो ।

اَفَعَيِيْنَا بِالْخَلْقِ الْاَوَّلِ ؕ بَلْ هُمْ فِيْ لَبْسٍ مِّنْ خَلْقٍ جَدِيْدٍ ﴿١٥﴾

१६. अतः के पहिलो सृष्टिबाट हामी दिक्क हुन पुगेका छौं? होइन, अपितु तिनीहरू नवीन सृष्टिलाई लिएर शङ्कामा डुबेका छन् ।

وَلَقَدْ خَلَقْنَا الْاِنْسَانَ وَنَعْلَمُ مَا تُوَسْوِسُ بِهٖ نَفْسُهٗ ۚۖ وَنَحْنُ اَقْرَبُ اِلَيْهِ مِنْ حَبْلِ الْوَرِيْدِ ﴿١٦﴾

१७. तथा निश्चयपूर्वक, हामीले मानिसलाई सृष्टि गरेका छौं तथा उसको मनले उससित जे कानाखुसी गर्छ त्यसलाई पनि हामी जान्दछौं, तथा हामी उसको कण्ठको नाडीभन्दा (पनि) अधिक उसका निकट रहेका छौं ।

اِذْ يَتَلَقَّى الْمُتَلَقِّيٰنِ عَنِ الْيَمِيْنِ وَعَنِ الشِّمَالِ قَعِيْدٌ ﴿١٧﴾

१८. अतः दुईवटा लेखा राख्ने (देवदूतहरू)ले (मानिसहरूका सम्पूर्ण (कार्यहरू) लेखेर (सुरक्षित) राख्ने गर्छन्, एउटा) दायाँतर्फ बसेको हुन्छ भने (अर्को चाहिँ) बायाँतर्फ,

مَا يَلْفِظُ مِنْ قَوْلٍ اِلَّا لَدَيْهِ رَقِيْبٌ عَتِيْدٌ ﴿١٨﴾

१९. त्यसले कुनै एउटा यस्तो शब्द उच्चारण गर्दैन (जसलाई लिपिबद्ध गर्न) उसका निकट एउटा संरक्षक (देवदूत) तत्पर रहेको नहोस् ।

وَجَآءَتْ سَكْرَةُ الْمَوْتِ بِالْحَقِّ ؕ ذٰلِكَ مَا كُنْتَ مِنْهُ تَحِيْدُ ﴿١٩﴾

२०. तथा मृत्युको तन्द्रावस्था अवश्य आउने छ । "यही नै त्यो वस्तु हो जसबाट तँ भाग्न चाहन्थिस् ।"

---

* प्राचीन अरबी जातिहरू ।

وَنُفِخَ فِي الصُّورِ ذَٰلِكَ يَوْمُ الْوَعِيدِ ﴿٢١﴾

२१. तथा बिगुल बजाइनेछ, "यही नै प्रतिश्रुत दिन रहेको छ ।"

وَجَاءَتْ كُلُّ نَفْسٍ مَّعَهَا سَائِقٌ وَشَهِيدٌ ﴿٢٢﴾

२२. तथा हरेक आत्मा अघिबढेर आउनेछ तथा त्यससित एउटा हाँक्ने (देवदूत) तथा एउटा साक्षी दिने (देवदूत) रहनेछ ।

لَّقَدْ كُنتَ فِي غَفْلَةٍ مِّنْ هَٰذَا فَكَشَفْنَا عَنكَ غِطَاءَكَ فَبَصَرُكَ الْيَوْمَ حَدِيدٌ ﴿٢٣﴾

२३. "तँलाई यसको केही पर्वाह थिएन, अब हामीले तँबाट तेरो पर्दा हटाइदिएका छौं, तथा आज तेरो दृष्टिशक्ति अति तीक्ष्ण हुन पुगेको छ ।"

وَقَالَ قَرِينُهُ هَٰذَا مَا لَدَيَّ عَتِيدٌ ﴿٢٤﴾

२४. तथा उसको सँगीले भन्नेछ, "यही नै मैले तयार पारेको (यसको कार्यविवरण) हो ।

أَلْقِيَا فِي جَهَنَّمَ كُلَّ كَفَّارٍ عَنِيدٍ ﴿٢٥﴾

२५. "तिमीहरू दुबै मिलेर हरेक (सत्यको) शत्रु कृतघ्न व्यक्तिलाई नर्कमा हाल,

مَّنَّاعٍ لِّلْخَيْرِ مُعْتَدٍ مُّرِيبٍ ﴿٢٦﴾

२६. "राम्रो कुराबाट रोक्ने, सीमोल्लङ्घनकारी, सन्देहवादी व्यक्तिलाई,

الَّذِي جَعَلَ مَعَ اللَّهِ إِلَٰهًا آخَرَ فَأَلْقِيَاهُ فِي الْعَذَابِ الشَّدِيدِ ﴿٢٧﴾

२७. जसले अल्लाहबाहेक अन्यान्यलाई उपास्य तुल्याएको थियो । अतः तिमीहरू दुबै मिलेर त्यसलाई कठोर दण्डमा हाल ।"

قَالَ قَرِينُهُ رَبَّنَا مَا أَطْغَيْتُهُ وَلَٰكِن كَانَ فِي ضَلَالٍ بَعِيدٍ ﴿٢٨﴾

२८. उसको सहभागीले भन्नेछ, "हे हाम्रा प्रतिपालक, मैले यसलाई विद्रोही बनाएको थिइँन, अपितुत्यो (स्वयम्) नै पथभ्रष्टतामा धेरै पर पुगेको थियो ।"

قَالَ لَا تَخْتَصِمُوا لَدَيَّ وَقَدْ قَدَّمْتُ إِلَيْكُم بِالْوَعِيدِ ﴿٢٩﴾

२९. (अल्लाहले) भन्नेछन्, "मेरा सामुन्ने झगडा नगर, पहिला नै मैले तिमीहरूलाई सावधान गरेको थिएँ ।

مَا يُبَدَّلُ الْقَوْلُ لَدَيَّ وَمَآ اَنَا بِظَلَّامٍ لِّلْعَبِيْدِ ﴿٢٩﴾

३०. "मैले दिएको दण्डाज्ञालाई परिवर्तन गर्न सकिनेछैन, तथा म (आफ्ना) सेवकहरूमाथि कदापि कुनै प्रकारको अन्याय गर्ने गर्दिन ।"

يَوْمَ نَقُوْلُ لِجَهَنَّمَ هَلِ امْتَلَأْتِ وَتَقُوْلُ هَلْ مِنْ مَّزِيْدٍ ﴿٣٠﴾

३१. त्यसदिन हामी नर्कलाई भन्नेछौं, "के तँ भरिपूर्ण भइस्?" तथा त्यसले उत्तर दिनेछ, "के अझै बांकी छ?"

وَاُزْلِفَتِ الْجَنَّةُ لِلْمُتَّقِيْنَ غَيْرَ بَعِيْدٍ ﴿٣١﴾

३२. तथा स्वर्गलाई धर्मनिष्ठ व्यक्तिहरूका निकट ल्याइनेछ, टाढा हुनेछैन ।

هٰذَا مَا تُوْعَدُوْنَ لِكُلِّ اَوَّابٍ حَفِيْظٍ ﴿٣٢﴾

३३. "यही नै हो जसको तिमीहरूलाई वचन दिइएको थियो– हरेक त्यस व्यक्तिलाई जसले निरन्तर (आफ्ना प्रतिपालकतर्फ) झुक्ने गर्थ्यो तथा (आफ्ना कार्यहरूमाथि) दृष्टि राख्ने गर्थ्यो,

مَنْ خَشِيَ الرَّحْمٰنَ بِالْغَيْبِ وَجَآءَ بِقَلْبٍ مُّنِيْبٍ ﴿٣٣﴾

३४. जो एकान्तमा कृपालु (अल्लाह) सित डराउँथ्यो तथा पश्चातापी हृदयका साथ (उनीसमक्ष) आएको थियो ।

ادْخُلُوْهَا بِسَلٰمٍ ذٰلِكَ يَوْمُ الْخُلُوْدِ ﴿٣٤﴾

३५. "तिमीहरू त्यहाँ शान्तिका साथ प्रवेश गर । यो कदापि समाप्त नहुने दिन रहेको छ ।"

لَهُمْ مَّا يَشَآءُوْنَ فِيْهَا وَلَدَيْنَا مَزِيْدٌ ﴿٣٥﴾

३६. त्यहाँ तिनीहरूले जे इच्छा गर्नेछन् त्यही प्राप्त गर्नेछन्, तथा हाम्रा जुनाफमा (प्रदान गर्नका निम्ति उत्तम वस्तुहरू) अझै रहेका छन् ।

وَكَمْ اَهْلَكْنَا قَبْلَهُمْ مِّنْ قَرْنٍ هُمْ اَشَدُّ مِنْهُمْ بَطْشًا فَنَقَّبُوْا فِى الْبِلَادِ هَلْ مِنْ مَّحِيْصٍ ﴿٣٦﴾

३७. तथा कति नै यस्ता पिँढीहरूलाई जुन तिनीहरूभन्दा अधिक शक्तिशाली

थिए, हामीले तिनीहरूभन्दा पहिला विनाश गरिसकेका छौं । (परन्तु जब दण्डको आगमन भयो), तिनीहरू देशमा दौडादौडी गर्न लागे । परन्तु (तिनीहरूका निम्ति) कुनै आश्रय लिने स्थल थियो र?

إِنَّ فِي ذَٰلِكَ لَذِكْرَىٰ لِمَن كَانَ لَهُ قَلْبٌ أَوْ أَلْقَى السَّمْعَ وَهُوَ شَهِيدٌ ﴿٣٧﴾

३८. वस्तुतः यसमा त्यस व्यक्तिका निम्ति एउटा उपदेश रहेको छ जसको हृदय छ, अथवा जसले ध्यानपूर्वक कुरा सुन्छ, र सोच्ने गर्छ ।

وَلَقَدْ خَلَقْنَا السَّمَاوَاتِ وَالْأَرْضَ وَمَا بَيْنَهُمَا فِي سِتَّةِ أَيَّامٍ وَمَا مَسَّنَا مِن لُّغُوبٍ ﴿٣٨﴾

३९. तथा वस्तुतः हामीले आकाशमण्डल र पृथ्वी तथा तिनीहरूका बीचमा रहेका सम्पूर्ण वस्तुहरूलाई छ समयावधिमा सिर्जना गर्‍यौं, तथा कुनै थकावटले हामीलाई छोएन ।

فَاصْبِرْ عَلَىٰ مَا يَقُولُونَ وَسَبِّحْ بِحَمْدِ رَبِّكَ قَبْلَ طُلُوعِ الشَّمْسِ وَقَبْلَ الْغُرُوبِ ﴿٣٩﴾

४०. अतः तिनीहरूका कुराहरूप्रति धैर्यधारण गर, तथा सूर्योदयभन्दा अघि तथा अस्ताउनु अघि आफ्ना प्रतिपालकको प्रशंसाका साथ गुणगान गर;

وَمِنَ اللَّيْلِ فَسَبِّحْهُ وَأَدْبَارَ السُّجُودِ ﴿٤٠﴾

४०. तथा रात (को एकांश) मा (पनि) तिमी उनको गुणगान गर्ने गर, तथा (निर्धारित) साष्टाङ्ग (उपासना)हरू पछि पनि ।

وَاسْتَمِعْ يَوْمَ يُنَادِ الْمُنَادِ مِن مَّكَانٍ قَرِيبٍ ﴿٤١﴾

४२. तथा सुन ! त्यसदिन जब एउटा आह्वान- कारीले नजिकैको स्थानबाट निस्सन्देह आह्वान गर्नेछ,

يَّوْمَ يَسْمَعُوْنَ الصَّيْحَةَ بِالْحَقِّ ۚ ذٰلِكَ يَوْمُ الْخُرُوْجِ ۝٤٢

४३. त्यसदिन जब तिनीहरूले वास्तवमै विस्फोट सुन्नेछन्; (चिहानबाट) बाहिर निस्कने दिन पनि त्यही हुनेछ ।

اِنَّا نَحْنُ نُحْيٖ وَ نُمِيْتُ وَ اِلَيْنَا الْمَصِيْرُ ۝٤٣

४४. वस्तुतः हामी नै जीवन दान गर्छौं, तथा मृत्यु प्रदान गर्छौं, तथा (अन्तिम) प्रत्यावर्तन हामीतर्फै हुनेछ ।

يَوْمَ تَشَقَّقُ الْاَرْضُ عَنْهُمْ سِرَاعًا ۚ ذٰلِكَ حَشْرٌ عَلَيْنَا يَسِيْرٌ ۝٤٤

४५. त्यसदिन जब पृथ्वी तिनीहरूमाथिबाट टुका टुका भएर विभाजित हुनेछ (तिनीहरू) शीघ्रतापूर्वक (बाहिर निस्कने छन्) त्यसरी सबैलाई एकत्रित गर्ने कार्य हाम्रा निम्ति अति सहज रहेको छ ।

نَحْنُ اَعْلَمُ بِمَا يَقُوْلُوْنَ وَ مَآ اَنْتَ عَلَيْهِمْ بِجَبَّارٍ ۚ فَذَكِّرْ بِالْقُرْاٰنِ مَنْ يَّخَافُ وَعِيْدِ ۝٤٥

४६. तिनीहरू जुन कुरा गर्छन् त्यसलाई हामी राम्ररी जान्दछौं तथा तिमीलाई तिनीहरूमाथि (कुनै प्रकारको) बलजफत् गर्न (खटाइएको) होइन । अतः जो मेरो चेतावनीप्रति डराउँछ त्यसलाई तिमी कुरानद्वारा उपदेश देउ ।




## अल्-जारियात
(हिजरतअघि उद्‌घाटित)

बِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ (١)

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

وَالذّٰرِيٰتِ ذَرْوًا (٢)

२. ती फैलाउनेहरूको शपथ, जसले पूर्णरूपमा फैलाउँदै हिँड्छन्,

فَالْحٰمِلٰتِ وِقْرًا (٣)

३. त्यसपछि ती व्यक्तिहरूको शपथ, जसले गहकिलो बोझ उठाउँछन् ।

فَالْجٰرِيٰتِ يُسْرًا (٤)

४. त्यसपछि ती व्यक्तिहरूको शपथ,जो सजिलैसित हिँड्ने गर्छन्,

فَالْمُقَسِّمٰتِ اَمْرًا (٥)

५. पुनः ती व्यक्तिहरूको शपथ जसले आदेश वितरण गर्छन्,

اِنَّمَا تُوْعَدُوْنَ لَصَادِقٌ (٦)

६. निश्चय नै, तिमीहरूलाई जुन कुराको वचन दिइन्छ त्यो सत्य रहेको छ;

وَّاِنَّ الدِّيْنَ لَوَاقِعٌ (٧)

७. तथा (प्रतिश्रुत) निर्णय भएरै छाड्नेछ

وَالسَّمَآءِ ذَاتِ الْحُبُكِ (٨)

८. तथा त्यस आकाशको शपथ, जुन मार्गहरूले (परिपूर्ण) छ,

اِنَّكُمْ لَفِيْ قَوْلٍ مُّخْتَلِفٍ (٩)

९. वस्तुतः तिमीहरू विभिन्न विचारधारा राख्ने गर्छौ ।

يُّؤْفَكُ عَنْهُ مَنْ اُفِكَ (١٠)

१०. केवल त्यस व्यक्तिलाई (प्रतिश्रुत सत्य) बाट विमुख तुल्याइनेछ जुन व्यक्ति विमुख तुल्याउन (योग्य) रहेको छ ।

قُتِلَ الْخَرّٰصُوْنَ (١١)

११. अड्कलबाजी गर्ने व्यक्तिहरूको विनाश होस्,

الَّذِيْنَ هُمْ فِيْ غَمْرَةٍ سَاهُوْنَ (١٢)

१२. जुन व्यक्तिहरू लापरवाहीमा

गम्भीररूपले डुब्न पुगेका छन् ।

يَسْـَٔلُوْنَ اَيَّانَ يَوْمُ الدِّيْنِ ﴿١٢﴾

१२. "निर्णयको दिन कहिले आउला त?" भनी तिनीहरू सोध्छन्,

يَوْمَ هُمْ عَلَى النَّارِ يُفْتَنُوْنَ ﴿١٣﴾

१४. (त्यो) त्यही दिन (हुनेछ) जुन दिन तिनीहरूलाई अग्निमा होमी दण्ड दिइनेछ ।

ذُوْقُوْا فِتْنَتَكُمْ ۭ هٰذَا الَّذِيْ كُنْتُمْ بِهٖ تَسْتَعْجِلُوْنَ ﴿١٤﴾

१५. तिमीहरू आफ्नो दुष्कार्य (को परिणाम) चाख । यो त्यही (वस्तु) हो जसबारे तिमीहरू हतार गर्थ्यौ ।"

اِنَّ الْمُتَّقِيْنَ فِيْ جَنّٰتٍ وَّعُيُوْنٍ ﴿١٥﴾

१६. (परन्तु) धर्मनिष्ठ व्यक्तिहरू भने निश्चय नै बगैंचाहरू र पानीका मूलहरूका बीचमा हुनेछन्,

اٰخِذِيْنَ مَآ اٰتٰىهُمْ رَبُّهُمْ ۭ اِنَّهُمْ كَانُوْا قَبْلَ ذٰلِكَ مُحْسِنِيْنَ ﴿١٦﴾

१७. तिनीहरूका प्रतिपालकले जे प्रदान गर्नेछन् त्यही तिनीहरूले ग्रहण गर्नेछन् । त्यसभन्दा पहिला तिनीहरू पुण्यकार्य गर्ने गर्थे ।

كَانُوْا قَلِيْلًا مِّنَ الَّيْلِ مَا يَهْجَعُوْنَ ﴿١٧﴾

१८. तिनीहरू राति अति नै कम सुत्ने गर्थे;

وَبِالْاَسْحَارِ هُمْ يَسْتَغْفِرُوْنَ ﴿١٨﴾

१९. तथा दिनको प्रारम्भकालमा प्रायश्चित गर्ने गर्थे;

وَفِيْٓ اَمْوَالِهِمْ حَقٌّ لِّلسَّاۗىِٕلِ وَالْمَحْرُوْمِ ﴿١٩﴾

२०. तथा तिनीहरूको सम्पत्तिमा भिखारीको र निराश्रयी (अभावग्रस्त)को अंश रहेको छ ।

وَفِي الْاَرْضِ اٰيٰتٌ لِّلْمُوْقِنِيْنَ ﴿٢٠﴾

२१. तथा दृढ विश्वासी व्यक्तिहरूका निम्ति पृथ्वीमा धेरै चिह्नहरू रहेका छन्,

وَفِيْٓ اَنْفُسِكُمْ ۭ اَفَلَا تُبْصِرُوْنَ ﴿٢١﴾

२२. तथा तिमीहरू आफैंमा (पनि) । अत: के तिमीहरू देख्दैनौ?

وَفِي السَّمَاۗءِ رِزْقُكُمْ وَمَا تُوْعَدُوْنَ ﴿٢٢﴾

२३. तथा आकाशमा तिमीहरूका निम्ति जीविकाको साधन रहेको छ, तथा

तिमीहरूलाई वचन दिइएको वस्तु (पनि) ।

فَوَرَبِّ السَّمَآءِ وَالْاَرْضِ اِنَّهٗ لَحَقٌّ مِّثْلَ مَآ اَنَّكُمْ تَنْطِقُوْنَ ﴿٢٣﴾

२४. तथा आकाशमण्डल र पृथ्वीका प्रतिपालकको शपथ, यो निस्सन्देह (त्यस्तै) सत्य रहेको छ, जस्तो तिमीहरूको वार्ता गर्नु (सत्य) रहेको छ ।

هَلْ اَتٰىكَ حَدِيْثُ ضَيْفِ اِبْرٰهِيْمَ الْمُكْرَمِيْنَ ﴿٢٤﴾

२५. के तिमीलाई इब्राहिमका आदरणीय अतिथीहरूको खबर प्राप्त भएको छ ?

اِذْ دَخَلُوْا عَلَيْهِ فَقَالُوْا سَلٰمًا ؕ قَالَ سَلٰمٌ ۚ قَوْمٌ مُّنْكَرُوْنَ ﴿٢٥﴾

२६. जब तिनीहरू उनीसमक्ष आए र भने, "शान्ति होस् !' "उनले भने, 'शान्ति होस!" (तिनीहरू) सबै अपरिचित (थिए) ।

فَرَاغَ اِلٰٓى اَهْلِهٖ فَجَآءَ بِعِجْلٍ سَمِيْنٍ ﴿٢٦﴾

२७. तथा उनी मौनतापूर्वक आफ्ना परिवारतर्फ लागे, तथा एउटा मोटो (भुटेको) बाच्छो लिएर आए,

فَقَرَّبَهٗٓ اِلَيْهِمْ قَالَ اَلَا تَاْكُلُوْنَ ﴿٢٧﴾

२८. तथा उनले त्यसलाई उनीहरूका सामुन्ने राखे । उनले भने, "के तिमीहरू खाँदैनौ ?"

فَاَوْجَسَ مِنْهُمْ خِيْفَةً ؕ قَالُوْا لَا تَخَفْ ؕ وَبَشَّرُوْهُ بِغُلٰمٍ عَلِيْمٍ ﴿٢٨﴾

२९. तथा तिनीहरूबारे उनको मनमा आशंका उत्पन्न भयो । तिनीहरूले भने, "तिमी नडराउ ।" तथा उनलाई तिनीहरूले एउटा ज्ञानवान पुत्रको (जन्म हुने) शुभसन्देश दिए ।

فَاَقْبَلَتِ امْرَاَتُهٗ فِيْ صَرَّةٍ فَصَكَّتْ وَجْهَهَا وَقَالَتْ عَجُوْزٌ عَقِيْمٌ ﴿٢٩﴾

३०. त्यसपछि उनकी पत्नी चिच्याउँदै र आफ्ना मुहारमा हिर्काउँदै अघि आइन् र भनिन्, "(म) एउटी बाँझी बूढी महिला (हुँ) !"

قَالُوْا كَذٰلِكِ ۙ قَالَ رَبُّكِ ؕ اِنَّهٗ هُوَ الْحَكِيْمُ الْعَلِيْمُ ﴿٣٠﴾

३१. तिनीहरूले भने, "त्यही नै हो, तथापि तिम्रा प्रतिपालकले यसै भनेका छन् । निश्चय नै, उनी तत्वज्ञ, सर्वज्ञ छन् ।"

قَالَ فَمَا خَطْبُكُمْ اَيُّهَا الْمُرْسَلُوْنَ ﴿٣١﴾

३२. (इब्राहिमले) भने, "हे सन्देशवाहकहरू हो ! अब तिमीहरूको

विशेष कार्य के रहेको छ त?"

قَالُوٓا۟ إِنَّآ أُرْسِلْنَآ إِلَىٰ قَوْمٍ مُّجْرِمِينَ ﴿٣٢﴾

३३. तिनीहरूले भने, "हामीलाई एउटा अपराधी जातितर्फ पठाइएको हो,"

لِنُرْسِلَ عَلَيْهِمْ حِجَارَةً مِّن طِينٍ ﴿٣٣﴾

३४. ताकि तिनीहरूमाथि हामी गिलो माटोबाट बनेका ढुङ्गा बर्साऊँ,"

مُّسَوَّمَةً عِندَ رَبِّكَ لِلْمُسْرِفِينَ ﴿٣٤﴾

३५. अपराधमा धेरै अघि बढिसकेका व्यक्तिहरूका निम्ति तिम्रा प्रतिपालकका तर्फबाट जसमा चिह्न लगाइएको छ।"

فَأَخْرَجْنَا مَن كَانَ فِيهَا مِنَ ٱلْمُؤْمِنِينَ ﴿٣٥﴾

३६. तथा हामीले त्यहाँ रहेका सबै विश्वासीहरूलाई बाहिर निकाल्यौं,

فَمَا وَجَدْنَا فِيهَا غَيْرَ بَيْتٍ مِّنَ ٱلْمُسْلِمِينَ ﴿٣٦﴾

३७. तथा हामीले त्यहाँ केवल एउटा आज्ञाकारीको घर पायौं।

وَتَرَكْنَا فِيهَآ ءَايَةً لِّلَّذِينَ يَخَافُونَ ٱلْعَذَابَ ٱلْأَلِيمَ ﴿٣٧﴾

३८. तथा पीडादायक दण्डबाट डराउने व्यक्तिहरूका निम्ति हामीले त्यहाँ एउटा चिह्न छाड्यौं।

وَفِى مُوسَىٰٓ إِذْ أَرْسَلْنَٰهُ إِلَىٰ فِرْعَوْنَ بِسُلْطَٰنٍ مُّبِينٍ ﴿٣٨﴾

३९. तथा -हामीले) मूसाको -घटनामा एउटा अर्को चिह्न छाड्यौं), जब हामीले उनलाई स्पष्ट प्रमाणका साथ फिरौनतर्फ पठाएका थियौं,

فَتَوَلَّىٰ بِرُكْنِهِۦ وَقَالَ سَٰحِرٌ أَوْ مَجْنُونٌ ﴿٣٩﴾

४०. परन्तु त्यो आफ्ना मुखियाहरूसित विमुख भएर हिँड्यो र भन्यो, "यो एउटा जांदुगर अथवा पागल व्यक्ति हो।"

فَأَخَذْنَٰهُ وَجُنُودَهُۥ فَنَبَذْنَٰهُمْ فِى ٱلْيَمِّ وَهُوَ مُلِيمٌ ﴿٤٠﴾

४१. अतः हामीले उसलाई र उसका लस्करलाई समात्यौं र तिनीहरूलाई समुद्रमा फ्याँकिदियौं तथा त्यो (स्वयम्) तिरस्कारयोग्य थियो।

وَفِى عَادٍ إِذْ أَرْسَلْنَا عَلَيْهِمُ ٱلرِّيحَ ٱلْعَقِيمَ ﴿٤١﴾

४२. तथा आद (जातिको घटना)मा (एउटा चिन्ह थियो), जब हामीले तिनीहरूविरुद्ध एउटा विध्वंसकारी आँधी

चलाएका थियौं ।

مَا تَذَرُ مِن شَيْءٍ أَتَتْ عَلَيْهِ إِلَّا جَعَلَتْهُ كَالرَّمِيمِ ﴿٤٢﴾

४३. जसमाथि त्यो चल्थ्यो त्यसलाई एउटा सडेको हड्डीसदृश बनाएर छाड्थ्यो

وَفِي ثَمُودَ إِذْ قِيلَ لَهُمْ تَمَتَّعُوا حَتَّىٰ حِينٍ ﴿٤٣﴾

४४. तथा समुद -जातिको घटना)मा (पनि एउटा चिह्न थियो), जब तिनीहरूलाई भनिएको थियो, "केही समयसम्मका निम्ति तिमीहरू आनन्द उपभोग गर ।"

فَعَتَوْا عَنْ أَمْرِ رَبِّهِمْ فَأَخَذَتْهُمُ الصَّاعِقَةُ وَهُمْ يَنظُرُونَ ﴿٤٤﴾

४५. परन्तु तिनीहरूले आफ्ना प्रतिपालकको आज्ञाविरुद्ध विद्रोह( पूर्ण कार्य) गरे । अत: तिनीहरूले देख्दा देख्दै तिनीहरूलाई वज्रपातले समात्यो !

فَمَا اسْتَطَاعُوا مِن قِيَامٍ وَمَا كَانُوا مُنتَصِرِينَ ﴿٤٥﴾

४६. तथा न तिनीहरू (पुन:) खडा हुनसके न त तिनीहरूले आफ्नो प्रतिरक्षा नै गर्न सके ।

وَقَوْمَ نُوحٍ مِّن قَبْلُ ۖ إِنَّهُمْ كَانُوا قَوْمًا فَاسِقِينَ ﴿٤٦﴾

४७. तथा (तिनीहरूभन्दा) पहिला नूहका मानिसहरूलाई (हामीले विनाश गरेका थियौं), तिनीहरू अवज्ञाकारी मानिसहरू थिए ।

وَالسَّمَاءَ بَنَيْنَاهَا بِأَيْدٍ وَإِنَّا لَمُوسِعُونَ ﴿٤٧﴾

४८. तथा आकाशमण्डललाई हामीले आफ्नै शक्तिद्वारा निर्माण गरेका हौं, तथा हामी त्यसलाई निरन्तर विस्तृत गर्दै जान्छौं ।

وَالْأَرْضَ فَرَشْنَاهَا فَنِعْمَ الْمَاهِدُونَ ﴿٤٨﴾

४९. तथा पृथ्वीलाई हामीले बिछ्याएका छौं, तथा (कति नै) उत्तमरूपमा हामी (वस्तुहरू) तयार गर्ने गर्छौं !

وَمِن كُلِّ شَيْءٍ خَلَقْنَا زَوْجَيْنِ لَعَلَّكُمْ تَذَكَّرُونَ ﴿٤٩﴾

५०. तथा हरेक वस्तुलाई हामीले जोडी जोडी बनाएका छौं, ताकि तिमीहरू सोच्न सक ।

فَفِرُّوا إِلَى اللَّهِ ۖ إِنِّي لَكُم مِّنْهُ نَذِيرٌ مُّبِينٌ ﴿٥٠﴾

५१. अत: तिमीहरू अल्लाहतर्फ दगुर । निश्चय नै, म उनका तर्फबाट तिमीहरूका

निम्ति एउटा स्पष्टरूपमा सावधान गर्ने व्यक्ति हुँ ।

وَلَا تَجْعَلُوْا مَعَ اللّٰهِ اِلٰهًا اٰخَرَ ۖ اِنِّیْ لَكُمْ مِّنْهُ نَذِیْرٌ مُّبِیْنٌ ۝٥١

५२. तथा अल्लाहसित अन्य कसैलाई उपास्य नबनाऊ । निश्चय नै, म उनका तर्फबाट तिमीहरूका निम्ति एउटा स्पष्टरूपमा सावधान गर्ने व्यक्ति हुँ ।

كَذٰلِكَ مَاۤ اَتَى الَّذِیْنَ مِنْ قَبْلِهِمْ مِّنْ رَّسُوْلٍ اِلَّا قَالُوْا سَاحِرٌ اَوْ مَجْنُوْنٌ ۝٥٢

५३. यसै प्रकार तिनीहरूभन्दा पहिलाका मानिसहरूका लागि, जब तिनीहरूसमक्ष सन्देशवाहक आए तब तिनीहरूले भने, "यो ता एउटा जादुगर अथवा एउटा पागल व्यक्ति हो !"

اَتَوَاصَوْا بِهٖ ۚ بَلْ هُمْ قَوْمٌ طَاغُوْنَ ۝٥٣

५४. के तिनीहरूले परस्पर एकअर्कालाई यही वसियत गरेका छन्? होइन, (अपितु) तिनीहरू (सबै) विद्रोही मानिसहरू हुन् ।

فَتَوَلَّ عَنْهُمْ فَمَاۤ اَنْتَ بِمَلُوْمٍ ۝٥٤

५५. अत: तिमी तिनीहरूबाट विमुख होउ, तथा तिमीमाथि कुनै दोष लाग्नेछैन ।

وَّذَكِّرْ فَاِنَّ الذِّكْرٰى تَنْفَعُ الْمُؤْمِنِیْنَ ۝٥٥

५६. तथा उपदेश दिने गर, किनभने उपदेशले विश्वासी व्यक्तिहरूलाई अवश्य लाभान्वित गर्छ ।

وَمَا خَلَقْتُ الْجِنَّ وَالْاِنْسَ اِلَّا لِیَعْبُدُوْنِ ۝٥٦

५७. तथा जिन्न र मानिसलाई मैले केवल तिनीहरूले मेरो उपासना गरून् भनी सृष्टि गरेको हुँ ।

مَاۤ اُرِیْدُ مِنْهُمْ مِّنْ رِّزْقٍ وَّمَاۤ اُرِیْدُ اَنْ یُّطْعِمُوْنِ ۝٥٧

५८. म तिनीहरूबाट कुनै प्रकारको जीवनवृत्ति चाहँदिन, न त तिनीहरूले मलाई ख्वाऊन् भन्ने नै म चाहन्छु ।

اِنَّ اللّٰهَ هُوَ الرَّزَّاقُ ذُو الْقُوَّةِ الْمَتِیْنُ ۝٥٨

५९. निश्चय नै, अल्लाह नै (स्वयम्) महान जीविका प्रदानकारी, सर्वशक्तिमान, प्रबल रहेका छन् ।

فَاِنَّ لِلَّذِیْنَ ظَلَمُوْا ذَنُوْبًا مِّثْلَ ذَنُوْبِ اَصْحٰبِهِمْ فَلَا یَسْتَعْجِلُوْنِ ۝٥٩

६०. निश्चय नै, जसले अत्याचार गरेका थिए तिनीहरूका निम्ति पनि त्यस्तै एउटा

अंश (भाग्य) हुनेछ जस्तो (अंश) तिनीहरू जस्तै (प्रकृतिका) मानिसहरूको थियो; अतः तिनीहरू मसित (दण्डमा) शीघ्रताको अनुरोध नगरून् ।

६१. अतः ती अविश्वासीहरूको सर्वनाश हुनेछ, तिनीहरुको त्यस दिनका कारण जसको तिनीहरुलाई प्रतिश्रुति दिइएको छ ।

فَوَيْلٌ لِّلَّذِيْنَ كَفَرُوْا مِنْ يَّوْمِهِمُ الَّذِيْ يُوْعَدُوْنَ




## अल्-तूर
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

وَالطُّوْرِ ②

२. (तूर) पर्वतको शपथ;

وَكِتٰبٍ مَّسْطُوْرٍ ③

३. तथा यस लिपिवद्ध पुस्तकको शपथ);

فِيْ رَقٍّ مَّنْشُوْرٍ ④

४. खुल्ला चर्मपत्रमा;

وَّالْبَيْتِ الْمَعْمُوْرِ ⑤

५. तथा (सदा) आबाद रहने गृहको (शपथ);

وَالسَّقْفِ الْمَرْفُوْعِ ⑥

६. तथा उच्च राखिएको छानोको (शपथ);

وَالْبَحْرِ الْمَسْجُوْرِ ⑦

७. तथा उर्लेको समुद्रको (शपथ);

اِنَّ عَذَابَ رَبِّكَ لَوَاقِعٌ ⑧

८. तिम्रा प्रतिपालकको दण्ड अवश्य आउनेछ ।

مَّا لَهٗ مِنْ دَافِعٍ ⑨

९. त्यसलाई कसैले टाल्न सक्दैन ।

يَّوْمَ تَمُوْرُ السَّمَآءُ مَوْرًا ⑩

१०. त्यसदिन जब आकाश भयानक हलचलका साथ काँप्नेछ,

وَّتَسِيْرُ الْجِبَالُ سَيْرًا ⑪

११. तथा पर्वतहरू (तीब्रगतिले) चल्नेछन्,

فَوَيْلٌ يَّوْمَئِذٍ لِّلْمُكَذِّبِيْنَ ⑫

१२. अत: त्यसदिन सत्यका अस्वीकारी-हरूको दुर्दशा हुनेछ,

الَّذِيْنَ هُمْ فِيْ خَوْضٍ يَّلْعَبُوْنَ ⑬

१३. जुन व्यक्तिहरू व्यर्थ कुराहरूमा

क्रीडा गर्दै व्यस्त रहन्छन् ।

يَوْمَ يُدَعُّوْنَ إِلٰى نَارِ جَهَنَّمَ دَعًّا ⑬

१४. त्यसदिन जब तिनीहरूलाई (कठोरतापूर्वक) धकेल्दै नर्कको अग्नितर्फ लगिनेछ ।

هٰذِهِ النَّارُ الَّتِيْ كُنْتُمْ بِهَا تُكَذِّبُوْنَ ⑭

१५. यही नै त्यो अग्नि हो जसलाई तिमीहरूले मिथ्या (कुरा स्वरूप) ठानेका थियौ ।

أَفَسِحْرٌ هٰذَآ أَمْ أَنْتُمْ لَا تُبْصِرُوْنَ ⑮

१६. "के यो जादू हो, अथवा के तिमीहरू देखिरहेका छैनौ?"

اِصْلَوْهَا فَاصْبِرُوْٓا أَوْ لَا تَصْبِرُوْا ۚ سَوَآءٌ عَلَيْكُمْ ۗ إِنَّمَا تُجْزَوْنَ مَا كُنْتُمْ تَعْمَلُوْنَ ⑯

१७. "त्यसभित्र तिमीहरू जल; तथा तिमीहरू धैर्यधारण गर अथवा नगर, तिमीहरूका निम्ति बराबर हुनेछ । तिमीहरूलाई (केवल) तिमीहरूले गर्ने गरेका कार्यहरूको प्रतिदान दिँइदैछ ।"

إِنَّ الْمُتَّقِيْنَ فِيْ جَنّٰتٍ وَّ نَعِيْمٍ ⑰

१८. धर्मनिष्ठ व्यक्तिहरू वस्तुतः बगैंचामा र वैभवमा रहेका छन्,

فٰكِهِيْنَ بِمَآ اٰتٰىهُمْ رَبُّهُمْ ۚ وَ وَقٰىهُمْ رَبُّهُمْ عَذَابَ الْجَحِيْمِ ⑱

१९. आफ्ना प्रतिपालकले प्रदान गरेका वस्तुहरूबाट आनन्द लिनेछन्, तथा तिनीहरूका प्रतिपालकले तिनीहरूलाई अग्निको दण्डबाट बचाएका छन् ।

كُلُوْا وَ اشْرَبُوْا هَنِيْٓـًٔا بِمَا كُنْتُمْ تَعْمَلُوْنَ ⑲

२०. "तिमीहरूले गर्ने गरेका कार्यहरूको प्रतिदानस्वरूप तिमीहरू प्रसन्नतापूर्वक खाऊ र पिऊ,

مُتَّكِـِٕيْنَ عَلٰى سُرُرٍ مَّصْفُوْفَةٍ ۚ وَ زَوَّجْنٰهُمْ بِحُوْرٍ عِيْنٍ ⑳

२१. पंक्तिबद्ध राखिएका सिरानीहरूमा ढल्किने छन् ।" तथा ठूला सुन्दर नेत्रयुक्त अविवाहित महिलाहरूसित हामी तिनीहरूको विवाह गरिदिनेछौं ।

وَالَّذِيْنَ اٰمَنُوْا وَاتَّبَعَتْهُمْ ذُرِّيَّتُهُمْ بِإِيْمَانٍ أَلْحَقْنَا بِهِمْ ذُرِّيَّتَهُمْ وَمَآ

२२. तथा ती व्यक्तिहरू, जसले विश्वास गर्छन् र जसका सन्तानले तिनीहरूकै आस्थाको अनुसरण गर्छन्– हामी

اَلۡحَقۡنَا بِهِمۡ ذُرِّیَّتَهُمۡ وَ مَاۤ اَلَتۡنٰهُمۡ مِّنۡ عَمَلِهِمۡ مِّنۡ شَیۡءٍ ؕ کُلُّ امۡرِیًٔۢ بِمَا کَسَبَ رَهِیۡنٌ ﴿۲۱﴾

तिनीहरूका सन्तानलाई तिनीहरूसितै जम्मा गर्नेछौं । तथा तिनीहरूका कार्यहरूको (प्रतिदानमा) हामी कुनै प्रकारको कमी गर्नेछैनौं । हरेक व्यक्ति उसको आफ्नै कमाईको प्रतिफलको बन्धकस्वरूप रहेको छ ।

وَ اَمۡدَدۡنٰهُمۡ بِفَاکِهَۃٍ وَّ لَحۡمٍ مِّمَّا یَشۡتَهُوۡنَ ﴿۲۲﴾

२३. तथा हामी तिनीहरूलाई (प्रशस्तरूपमा) फल र मांस तिनीहरूकै इच्छाअनुसार प्रशस्त मात्रामा प्रदान गर्नेछौं

یَتَنَازَعُوۡنَ فِیۡهَا کَاۡسًا لَّا لَغۡوٌ فِیۡهَا وَ لَا تَاۡثِیۡمٌ ﴿۲۳﴾

२४. त्यहाँ तिनीहरूले (परस्पर) एक अर्कालाई यस्तो प्याला पेस गर्नेछन् जसमा न व्यर्थ कुराहरू हुनेछन्, न त कुनै पाप (कर्म) नै ।

وَ یَطُوۡفُ عَلَیۡهِمۡ غِلۡمَانٌ لَّهُمۡ کَاَنَّهُمۡ لُؤۡلُؤٌ مَّکۡنُوۡنٌ ﴿۲۴﴾

२५. तथा त्यहाँ तिनीहरूकै युवकहरू तिनीहरूको सेवामा प्रतिक्षारत रहनेछन्, मानौं तिनीहरू सुरक्षित राखिएका मोती हुन्

وَ اَقۡبَلَ بَعۡضُهُمۡ عَلٰی بَعۡضٍ یَّتَسَآءَلُوۡنَ ﴿۲۵﴾

२६. तथा तिनीहरू एक अर्कातर्फ फर्किएर परस्पर प्रश्न उत्तर गर्नेछन् ।

قَالُوۡۤا اِنَّا کُنَّا قَبۡلُ فِیۡۤ اَهۡلِنَا مُشۡفِقِیۡنَ ﴿۲۶﴾

२७. तिनीहरूले भन्नेछन्, "यसअघि जब (हामी) आफ्ना परिवारका बीचमा (थियौं), हामी (अल्लाहको अप्रसन्नताप्रति) अति नैं भयभीत रहने गर्थ्यौं;"

فَمَنَّ اللّٰهُ عَلَیۡنَا وَ وَقٰىنَا عَذَابَ السَّمُوۡمِ ﴿۲۷﴾

२८. "परन्तु अल्लाहले हामीमाथि कृपा गरे, र हामीलाई जलाउने लू (तातो हावा) को दण्डबाट बचाए ।"

اِنَّا کُنَّا مِنۡ قَبۡلُ نَدۡعُوۡهُ ؕ اِنَّهٗ هُوَ الۡبَرُّ الرَّحِیۡمُ ﴿۲۸﴾

२९. "पहिलादेखि नै हामी उनलाई पुकार्ने गर्थ्यौं । उनी निश्चयपूर्वक परम दाता, परम करुणाशील छन् ।"

فَذَكِّرْ فَمَآ اَنْتَ بِنِعْمَتِ رَبِّكَ بِكَاهِنٍ وَّلَا مَجْنُوْنٍ ۝

३०. अत: तिमी उपदेश देउ । तिम्रा प्रतिपालकको कृपाले न तिमी ज्योतिषी हौ न त कुनै पागल व्यक्ति नै ।

اَمْ يَقُوْلُوْنَ شَاعِرٌ نَّتَرَبَّصُ بِهٖ رَيْبَ الْمَنُوْنِ ۝

३१. के "यो व्यक्ति ता कवि हो, हामी यसमाथि समयको मार पर्नेछ भनी प्रतीक्षा गरिरहेछौं" भनी तिनीहरू भन्ने गर्छन् त?

قُلْ تَرَبَّصُوْا فَاِنِّيْ مَعَكُمْ مِّنَ الْمُتَرَبِّصِيْنَ ۝

३२. तिमी भन, अत: तिमीहरू प्रतीक्षा गरम (पनि) तिमीहरूसितै प्रतीक्षा गर्ने व्यक्तिहरूमध्ये रहेको छु ।

اَمْ تَاْمُرُهُمْ اَحْلَامُهُمْ بِهٰذَآ اَمْ هُمْ قَوْمٌ طَاغُوْنَ ۝

३३. के तिनीहरूको बुद्धि (र विवेक) ले तिनीहरूलाई यही कुरो सिकाउँछ अथवा तिनीहरू विद्रोही व्यक्तिहरू हुन्?

اَمْ يَقُوْلُوْنَ تَقَوَّلَهٗ ۚ بَلْ لَّا يُؤْمِنُوْنَ ۝

३४. "उसले यो कुरो आफैं गढेको हो" भनी तिनीहरू भन्छन् त? होइन, अपितु तिनीहरू वस्तुत: विश्वासै गर्दैनन् ।

فَلْيَاْتُوْا بِحَدِيْثٍ مِّثْلِهٖٓ اِنْ كَانُوْا صٰدِقِيْنَ ۝

३५. अत: यदि तिनीहरू साँचो कुरो गरिरहेछन् भने, तिनीहरू पनि यस्तै वर्णन प्रस्तुत गरून् !

اَمْ خُلِقُوْا مِنْ غَيْرِ شَيْءٍ اَمْ هُمُ الْخٰلِقُوْنَ ۝

३६. के तिनीहरूलाई बिनाकारण सृष्टि गरिएको छ, अथवा तिनीहरू स्वयम् आफ्ना सृष्टिकर्ता रहेका छन्?

اَمْ خَلَقُوا السَّمٰوٰتِ وَالْاَرْضَ ۚ بَلْ لَّا يُوْقِنُوْنَ ۝

३७. के आकाशमण्डल र पृथ्वीको सिर्जना तिनीहरूले नै गरेका हुन्? होइन, अपितु तिनीहरूमा वस्तुत: आस्था नै छैन

اَمْ عِنْدَهُمْ خَزَآئِنُ رَبِّكَ اَمْ هُمُ الْمُصَيْطِرُوْنَ ۝

३८. के तिनीहरू तिम्रा प्रतिपालकको खजानाका स्वामी हुन्, अथवा (त्यसका) संरक्षक हुन्?

اَمْ لَهُمْ سُلَّمٌ يَّسْتَمِعُوْنَ فِيْهِ ۚ فَلْيَاْتِ مُسْتَمِعُهُمْ بِسُلْطٰنٍ مُّبِيْنٍ ۝

३९. के तिनीहरूसित (स्वर्ग चढ्ने) कुनै सिंढी छ जसद्वारा तिनीहरू कुरो सुन्ने गर्छन्? त्यसो भए ती कुराहरू सुन्ने

व्यक्तिले कुनै स्पष्ट प्रमाण प्रस्तुत गरोस् ।

أَمْ لَهُ الْبَنَاتُ وَلَكُمُ الْبَنُونَ ۝٣٩

४०. के उनका भने पुत्रीहरू रहेका छन् र तिनीहरूका चाहिँ पुत्रहरू?

أَمْ تَسْأَلُهُمْ أَجْرًا فَهُم مِّن مَّغْرَمٍ مُّثْقَلُونَ ۝٤٠

४१. के तिमी तिनीहरूबाट कुनै यस्तो पारितोषिक माग्छौ, जसको ऋणमा तिनीहरू दबिन पुगेका छन्?

أَمْ عِندَهُمُ الْغَيْبُ فَهُمْ يَكْتُبُونَ ۝٤١

४२. के तिनीहरूलाई अदृश्य कुराहरू (को ज्ञान) प्राप्त छ, जसलाई तिनीहरू लिपिवद्ध गर्न सकून्?

أَمْ يُرِيدُونَ كَيْدًا ۖ فَالَّذِينَ كَفَرُوا هُمُ الْمَكِيدُونَ ۝٤٢

४३. के तिनीहरू कुनै षडयन्त्र गर्न चाहन्छन्? परन्तु ती अविश्वासी व्यक्तिहरू नै षडयन्त्रका शिकार हुनेछन् ।

أَمْ لَهُمْ إِلَٰهٌ غَيْرُ اللَّهِ ۚ سُبْحَانَ اللَّهِ عَمَّا يُشْرِكُونَ ۝٤٣

४४. के अल्लाहलाई छाडी तिनीहरूको अन्य कोही उपास्य रहेको छ? अल्लाह ती कुराहरूभन्दा अति उच्च र महान रहेका छन् जसलाई तिनीहरू (उनका) सहभागी तुल्याउँछन् !

وَإِن يَرَوْا كِسْفًا مِّنَ السَّمَاءِ سَاقِطًا يَقُولُوا سَحَابٌ مَّرْكُومٌ ۝٤٤

४५. तथा यदि तिनीहरूले कुनै बादलको टुको उत्रँदै गरेको देखेमा (के) भन्छन् (भने), "(शीघ्र नै) तहमाथि तह बाक्लो कुइरो (आउनेछ) ।"

فَذَرْهُمْ حَتَّىٰ يُلَاقُوا يَوْمَهُمُ الَّذِي فِيهِ يُصْعَقُونَ ۝٤٥

४६. अत: तिनीहरूलाई तिनीहरूको (प्रतिश्रुत) दिनसित साक्षात् नहुन्जेलसम्म एक्लै छाडिदेउ, त्यसदिन तिनीहरूमाथि बज्रपात पर्नेछ ।

يَوْمَ لَا يُغْنِي عَنْهُمْ كَيْدُهُمْ شَيْئًا وَلَا هُمْ يُنصَرُونَ ۝٤٦

४७. जुनदिन तिनीहरूको योजनाले तिनीहरूलाई कुनै लाभ दिनेछैन, न त तिनीहरूको सहयोग नै गरिनेछ ।

وَإِنَّ لِلَّذِينَ ظَلَمُوا عَذَابًا دُونَ ذَٰلِكَ وَلَٰكِنَّ أَكْثَرَهُمْ لَا يَعْلَمُونَ ۝٤٧

४८. तथा अत्याचारी व्यक्तिहरूलाई वस्तुत: त्यसबाहेक अर्को एउटा दण्ड

मिल्नेछ । परन्तु तिनीहरूमध्ये अधिकतर व्यक्तिहरूले (यो) जान्दैनन् ।

وَاصْبِرْ لِحُكْمِ رَبِّكَ فَإِنَّكَ بِأَعْيُنِنَا وَسَبِّحْ بِحَمْدِ رَبِّكَ حِينَ تَقُومُ ﴿٤٩﴾

४९. अतः तिमी धैर्यतापूर्वक आफ्ना प्रतिपालकको निर्णयको प्रतीक्षा गर; निःस्सन्देह तिमी हाम्रा दृष्टिका सामुन्ने रहेका छौ; तथा जब तिमी (निद्राबाट) ब्युँझन्छौ (तब) आफ्ना प्रतिपालकको प्रशंसाका साथ स्तुति गर्ने गर;

وَمِنَ اللَّيْلِ فَسَبِّحْهُ وَإِدْبَارَ النُّجُومِ ﴿٥٠﴾

५०. तथा रात्रिको एकांशमा (पनि) तिमी उनको गुणगान गर तथा ताराहरू अस्ताउने समयमा पनि ।

سُوْرَةُ النَّجْمِ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ ثَلٰثٌ وَّسِتُّوْنَ اٰيَةً وَّثَلٰثَةُ رُكُوْعَاتٍ

## अल्-नज्म
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

وَالنَّجْمِ اِذَا هَوٰى ②

२. नक्षत्रको शपथ, जब त्यो खस्न पुग्छ,

مَا ضَلَّ صَاحِبُكُمْ وَمَا غَوٰى ③

३. तिमीहरूका साथीले न गल्ती गरेका छन् न त उनी पथभ्रष्ट नै भएका छन्,

وَمَا يَنْطِقُ عَنِ الْهَوٰى ④

४. न उनी (आफ्नो) इच्छानुसार बोल्ने गर्छन् ।

اِنْ هُوَ اِلَّا وَحْيٌ يُّوْحٰى ⑤

५. यो ता (अल्लाहका तर्फबाट) अवतीर्ण भएको (विशुद्ध) आकाशवाणी हो ।

عَلَّمَهٗ شَدِيْدُ الْقُوٰى ⑥

६. परम शक्ति(का स्वामी अल्लाह)ले उनलाई सिकाएका हुन्,

ذُوْ مِرَّةٍ ۭ فَاسْتَوٰى ⑦

७. परम शक्तिका स्वामी । त्यसपछि उनी (आफ्नो परम सिंहासनमाथि) विराजमान भए ।

وَهُوَ بِالْاُفُقِ الْاَعْلٰى ⑧

८. तथा (उनले आफ्नो वाणी त्यस समय अवतीर्ण गरे) जब उनी सर्वोच्च क्षितिजमा थिए,

ثُمَّ دَنَا فَتَدَلّٰى ⑨

९. त्यसपछि उनी (अल्लाहका) नजिक बढ्दै गए, त्यसपछि उनी (मानवजातितर्फ) उत्रिएर आए,

فَكَانَ قَابَ قَوْسَيْنِ اَوْ اَدْنٰى ⑩

१०. अतः उनी दुईवटा धनुषका एउटै ताँदो (स्वरूप) अथवा त्यो भन्दा पनि अधिक निकट हुनपुगे ।

فَاَوۡحٰۤى اِلٰى عَبۡدِهٖ مَاۤ اَوۡحٰى ؕ﴿۱۱﴾

११. त्यसपछि उनले आफ्ना सेवकप्रति त्यो आकाशवाणी गरे जुन (कुरा) उनले आकाशवाणी गरे ।

مَا كَذَبَ الۡفُؤَادُ مَا رَاٰى ﴿۱۲﴾

१२. जुन कुरा उसले देख्यो त्यसबारे - नबीको) मनले मिथ्या वर्णन गरेन ।

اَفَتُمٰرُوۡنَهٗ عَلٰى مَا يَرٰى ﴿۱۳﴾

१३. अतः जुन कुरा उनले देखेका थिए के तिमीहरू त्यसबारे उनीसित विवाद गर्छौ त?

وَلَقَدۡ رَاٰهُ نَزۡلَةً اُخۡرٰى ۙ﴿۱۴﴾

१४. तथा उनले त्यसलाई निश्चयपूर्वक दोस्रोपटक (पनि) देखेका थिए,

عِنۡدَ سِدۡرَةِ الۡمُنۡتَهٰى ﴿۱۵﴾

१५. दूरतम अवस्थित बयरको वृक्षका निकटमा,

عِنۡدَهَا جَنَّةُ الۡمَاۡوٰى ؕ﴿۱۶﴾

१६. जसको निकटमै सदा रहिरहने बगैचा रहेको छ ।

اِذۡ يَغۡشَى السِّدۡرَةَ مَا يَغۡشٰى ۙ﴿۱۷﴾

१७. (त्यो तब भयो) जब ढाक्ने वस्तुले त्यस बयरको वृक्षलाई ढाकेको थियो,

مَا زَاغَ الۡبَصَرُ وَمَا طَغٰى ﴿۱۸﴾

१८. न नेत्र भ्रममा पर्‍यो, न त (त्यो) विचलित भयो ।

لَقَدۡ رَاٰى مِنۡ اٰيٰتِ رَبِّهِ الۡكُبۡرٰى ﴿۱۹﴾

१९. निश्चय नै, उनले आफ्ना प्रतिपालकका ठूला चिह्नहरूमध्ये एउटा महानतम चिह्न देखे ।

اَفَرَءَيۡتُمُ اللّٰتَ وَالۡعُزّٰى ۙ﴿۲۰﴾

२०. अब (मलाई) लात* र उज्जाका* बारेमा बताऊ,

وَمَنٰوةَ الثَّالِثَةَ الۡاُخۡرٰى ﴿۲۱﴾

२१. तथा तेस्रो, मनात*, जुन एउटा अर्कै (देवीस्वरूप) रहेको छ ।

---

* मक्काका कुरैशहरूका सर्वप्रिय मूर्तिहरू ।

أَلَكُمُ الذَّكَرُ وَلَهُ الْأُنثَىٰ ﴿٢١﴾

२२. "के? तिमीहरूका निम्ति भने छोराहरू रहेका छन् तथा उनका निम्ति छोरीहरू !"

تِلْكَ إِذًا قِسْمَةٌ ضِيزَىٰ ﴿٢٢﴾

२३. यो ता निस्सन्देह एउटा अनुचित विभाजन भयो ।

إِنْ هِيَ إِلَّا أَسْمَاءٌ سَمَّيْتُمُوهَا أَنتُمْ وَآبَاؤُكُم مَّا أَنزَلَ اللَّهُ بِهَا مِن سُلْطَانٍ ۚ إِن يَتَّبِعُونَ إِلَّا الظَّنَّ وَمَا تَهْوَى الْأَنفُسُ ۖ وَلَقَدْ جَاءَهُم مِّن رَّبِّهِمُ الْهُدَىٰ ﴿٢٣﴾

२४. "यी ता केवल तिमीहरूले र तिमीहरूका पुर्खाहरूले राखेका केही नामहरू हुन्– जसका सम्बन्धमा अल्लाहले कुनै प्रमाण अवतीर्ण गरेका छैनन् । तिनीहरू केवल अनुमानित र आफ्नो मनले चाहेका कुराहरूको अनुसरण गर्छन्, तथा तिनीहरूसमक्ष तिनीहरूका प्रतिपालकका तर्फबाट मार्गदर्शन आइसकेको छ ।

أَمْ لِلْإِنسَانِ مَا تَمَنَّىٰ ﴿٢٤﴾

२५. के मानिसले इच्छा गरेअनुसार त्यसलाई ती सबै कुरा प्राप्त हुन सक्छ र?

فَلِلَّهِ الْآخِرَةُ وَالْأُولَىٰ ﴿٢٥﴾ ع

२६. होइन, (अपितु) हरेक कुराको अन्त र प्रारम्भ अल्लाहकै अधीनमा रहेको छ ।

وَكَم مِّن مَّلَكٍ فِي السَّمَاوَاتِ لَا تُغْنِي شَفَاعَتُهُمْ شَيْئًا إِلَّا مِن بَعْدِ أَن يَأْذَنَ اللَّهُ لِمَن يَشَاءُ وَيَرْضَىٰ ﴿٢٦﴾

२७. तथा आकाशमण्डलमा कति नै यस्ता फरिस्ताहरू छन् । जसको मध्यस्थताले कसैलाई कुनै लाभ पुऱ्याउँदैन, सिवाय त्यो व्यक्ति जसलाई अल्लाहले चाहन्छन् र मनपराउँछन्, र उनले त्यसका निम्ति अनुमति दिइसकेका छन् ।

إِنَّ الَّذِينَ لَا يُؤْمِنُونَ بِالْآخِرَةِ لَيُسَمُّونَ الْمَلَائِكَةَ تَسْمِيَةَ الْأُنثَىٰ ﴿٢٧﴾

२८. जसले परलोकप्रति विश्वास गर्दैनन् ती व्यक्तिहरू फरिस्ताहरूलाई महिलाहरूको नाम दिन्छन् ,

وَمَا لَهُم بِهِ مِنْ عِلْمٍ ۖ إِن يَتَّبِعُونَ إِلَّا الظَّنَّ ۖ وَإِنَّ الظَّنَّ لَا يُغْنِي مِنَ الْحَقِّ شَيْئًا ﴿٢٨﴾

२९. परन्तु तिनीहरूलाई त्यसबारे केही ज्ञान प्राप्त छैन । तिनीहरू केवल अनुमानित कुराहरूको अनुसरण गर्छन्, तथा अनुमानित कुराले सत्यविरुद्ध कुनै

लाभ पुऱ्याउन सक्दैन ।

فَأَعْرِضْ عَن مَّن تَوَلَّىٰ عَن ذِكْرِنَا وَلَمْ يُرِدْ إِلَّا الْحَيَاةَ الدُّنْيَا ﴿٣٠﴾

३०. अतः जसले हाम्रो स्मरणबाट विमुखता अवलम्बन गर्छ तथा केवल सांसारिक जीवनको अभिलाषी रहन्छ त्यस व्यक्तिबाट तिमी आफ्नो मुख अन्यत्र (फेर) लगाउ ।

ذَٰلِكَ مَبْلَغُهُم مِّنَ الْعِلْمِ ۚ إِنَّ رَبَّكَ هُوَ أَعْلَمُ بِمَن ضَلَّ عَن سَبِيلِهِ وَهُوَ أَعْلَمُ بِمَنِ اهْتَدَىٰ ﴿٣١﴾

३१. त्यही नै तिनीहरूको ज्ञानको अन्तिम (सीमा) रहेको हो । तिम्रा प्रतिपालकले त्यस व्यक्तिलाई राम्ररी जान्दछन् जो व्यक्ति उनको मार्गबाट पथभ्रष्ट हुन पुग्छ, तथा उनले त्यस व्यक्तिलाई पनि राम्ररी जान्दछन् जसले मार्गदर्शनको अनुसरण गर्छ

وَلِلَّهِ مَا فِي السَّمَاوَاتِ وَمَا فِي الْأَرْضِ لِيَجْزِيَ الَّذِينَ أَسَاءُوا بِمَا عَمِلُوا وَيَجْزِيَ الَّذِينَ أَحْسَنُوا بِالْحُسْنَى ﴿٣٢﴾

३२. तथा आकाशमण्डलमा र पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरूका स्वामी अल्लाह नै रहेका छन् , फलस्वरूप जसले अपकर्म गर्छन् उनले तिनीहरूलाई तिनीहरूको कर्मको प्रतिदान प्रदान गर्छन्, तथा जसले पुण्यकार्य गर्छन् तिनीहरूलाई उनी त्यसको सर्वोतम प्रतिदान प्रदान गर्छन् ।

الَّذِينَ يَجْتَنِبُونَ كَبَائِرَ الْإِثْمِ وَالْفَوَاحِشَ إِلَّا اللَّمَمَ ۚ إِنَّ رَبَّكَ وَاسِعُ الْمَغْفِرَةِ ۚ هُوَ أَعْلَمُ بِكُمْ إِذْ أَنشَأَكُم مِّنَ الْأَرْضِ وَإِذْ أَنتُمْ أَجِنَّةٌ فِي بُطُونِ أُمَّهَاتِكُمْ ۖ فَلَا تُزَكُّوا أَنفُسَكُمْ ۖ هُوَ أَعْلَمُ بِمَنِ اتَّقَىٰ ﴿٣٣﴾

३३. जुन व्यक्तिहरू साधारण त्रुटिबाहेक ठूला पापहरू र अनैतिक कुराहरूबाट बच्ने गर्छन्– वस्तुतः, क्षमादान गर्नमा तिम्रा प्रतिपालक अति उदार रहेका छन् । उनले तिमीहरूलाई (त्यस समयदेखि नै) अति राम्ररी जान्दछन् जब उनले तिमीहरूलाई पृथ्वीबाट सिर्जना गरे, र तिमीहरू आफ्नी माताको गर्भमा भ्रुणस्वरूप रहेका थियौ । त्यसकारण तिमीहरू स्वयम्लाई पवित्र नबखान । उनी त्यस व्यक्तिलाई अति राम्ररी जान्दछन् जो साँच्चैको धर्मनिष्ठ रहेको छ ।

أَفَرَأَيْتَ الَّذِي تَوَلَّىٰ ﴿٣٤﴾

३४. के तिमीले त्यस व्यक्तिलाई देखेका छौ जसले विमुखता अवलम्बन गरेको छ,

وَاَعْطٰى قَلِيْلًا وَّ اَكْدٰى ﴿٣٤﴾

३४. तथा अलिकति दिएर कृपणता प्रदर्शन गर्न लागेको छ?

اَعِنْدَهٗ عِلْمُ الْغَيْبِ فَهُوَ يَرٰى ﴿٣٥﴾

३५. के त्यसलाई अदृश्य कुराको ज्ञान प्राप्त छ, ताकि उसले देख्न सकोस्?

اَمْ لَمْ يُنَبَّاْ بِمَا فِيْ صُحُفِ مُوْسٰى ﴿٣٦﴾

३६. के उसलाई मूसाको पुस्तकमा रहेका कुराहरूबाट अवगत गरिएको छैन र

وَاِبْرٰهِيْمَ الَّذِيْ وَفّٰى ﴿٣٧﴾

३७. तथा (चिह्नहरू) पूर्ण गर्ने इब्राहिमको (पुस्तक) बाट?

اَلَّا تَزِرُ وَازِرَةٌ وِّزْرَ اُخْرٰى ﴿٣٨﴾

३८. अर्थात्, कुनै बोझ उठाउने (व्यक्तिले) अर्काको बोझ उठाउन सक्नेछैन,

وَاَنْ لَّيْسَ لِلْاِنْسَانِ اِلَّا مَا سَعٰى ﴿٣٩﴾

३९. तथा मानिसलाई केवल उसले गरेको प्रचेष्टा (को फल) प्राप्त हुन्छ;

وَاَنَّ سَعْيَهٗ سَوْفَ يُرٰى ﴿٤٠﴾

४०. तथा उसको (प्रचेष्टाई) शीघ्र नै स्वीकार गरिनेछ,

ثُمَّ يُجْزٰىهُ الْجَزَآءَ الْاَوْفٰى ﴿٤١﴾

४१. त्यसपछि उसलाई त्यसको पूर्ण प्रतिदान प्राप्त हुनेछ,

وَاَنَّ اِلٰى رَبِّكَ الْمُنْتَهٰى ﴿٤٢﴾

४२. तथा (सम्पूर्ण कुराहरू) अन्ततः तिम्रै प्रतिपालकका जुनाफमा जान्छन्,

وَاَنَّهٗ هُوَ اَضْحَكَ وَاَبْكٰى ﴿٤٣﴾

४३. तथा ती उनी नै जसले (मानिसहरूलाई) हसाउँछन् तथा (तिनीहरूलाई) रुवाउँछन्,

وَاَنَّهٗ هُوَ اَمَاتَ وَاَحْيَا ﴿٤٤﴾

४४. तथा उनी नै मृत्यु प्रदान गर्छन् र जीवन दान गर्छन्,

وَاَنَّهٗ خَلَقَ الزَّوْجَيْنِ الذَّكَرَ وَالْاُنْثٰى ﴿٤٥﴾

४५. तथा उनले नै पुरुष र स्त्री(स्वरूप) सम्पूर्ण जोडीहरू सृष्टि गरेका हुन्,

مِنْ نُّطْفَةٍ اِذَا تُمْنٰى ﴿٤٦﴾

४६. एउटा वीर्यको थोपाबाट, जब त्यसलाई खसालिन्छ,

وَأَنَّ عَلَيْهِ النَّشْأَةَ الْأُخْرَىٰ ﴿٤٨﴾

४८. तथा पुर्नरूत्थान पनि उनकै जिम्मा रहेको छ,

وَأَنَّهُ هُوَ أَغْنَىٰ وَأَقْنَىٰ ﴿٤٩﴾

४९. तथा ती उनी नै हुन् जसले धनी तुल्याउँछन् र सम्पति प्रदान गरी सन्तुष्ट तुल्याउँछन्

وَأَنَّهُ هُوَ رَبُّ الشِّعْرَىٰ ﴿٥٠﴾

५०. तथा के पनि भने, उनी नै सिरियास (नक्षत्र) का स्वामी रहेका छन्,

وَأَنَّهُ أَهْلَكَ عَادًا الْأُولَىٰ ﴿٥١﴾

५१. तथा उनले नै आदका प्रथम जातिलाई ध्वस्त पारेका थिए,

وَثَمُودَ فَمَا أَبْقَىٰ ﴿٥٢﴾

५२. तथा समूद (जाति) लाई पनि उनले (तिनीहरूमध्ये कसैलाई) बाँकी छाडेका थिएनन्

وَقَوْمَ نُوحٍ مِّن قَبْلُ ۖ إِنَّهُمْ كَانُوا هُمْ أَظْلَمَ وَأَطْغَىٰ ﴿٥٣﴾

५३. तथा -तिनीहरूभन्दा) पहिला नूहका मानिसहरूलाई (उनले ध्वस्त पारेका थिए)– वस्तुत: तिनीहरू घोर अत्याचारी र विद्रोही थिए–

وَالْمُؤْتَفِكَةَ أَهْوَىٰ ﴿٥٤﴾

५४. तथा (लूत जातिका) विद्रोही नगरहरूलाई उनले नै उल्टाएका थिए

فَغَشَّاهَا مَا غَشَّىٰ ﴿٥٥﴾

५५. त्यसकारण तिनीहरूलाई त्यसकुराले ढाक्यो जसले ढाक्नु (निश्चित) थियो ।

فَبِأَيِّ آلَاءِ رَبِّكَ تَتَمَارَىٰ ﴿٥٦﴾

५६. (ए मानिस), अत: तँ आफ्ना प्रतिपालकका अनुग्रहहरूमध्ये कुन कुन कुराका बारेमा विवाद गर्छस् त?

هَٰذَا نَذِيرٌ مِّنَ النُّذُرِ الْأُولَىٰ ﴿٥٧﴾

५७. यी पनि पहिलाका सावधानकर्ताहरूकै वर्गका एकजना सावधानकर्ता रहेका छन् ।

أَزِفَتِ الْآزِفَةُ ﴿٥٨﴾

५८. त्यो आउनुपर्ने (निर्धारित घडी) निकट आईपुगेको छ,

لَيْسَ لَهَا مِنْ دُوْنِ اللّٰهِ كَاشِفَةٌ ﴿٥٩﴾

५९. केवल अल्लाहले मात्र त्यसलाई टार्न सक्छन् ।

اَفَمِنْ هٰذَا الْحَدِيْثِ تَعْجَبُوْنَ ﴿٦٠﴾

६०. अतः के तिमीहरू यस घोषणाप्रति आश्चर्यचकित हुन्छौ?

وَتَضْحَكُوْنَ وَلَا تَبْكُوْنَ ﴿٦١﴾

६१. तथा के तिमीहरू हाँस्छौ, र तिमीहरू रुँदैनौ?

وَاَنْتُمْ سٰمِدُوْنَ ﴿٦٢﴾

६२. तथा के तिमीहरू बेपर्वाहीका साथ अहङ्कार नै गरिरहनेछौ?

فَاسْجُدُوْا لِلّٰهِ وَاعْبُدُوْا ﴿٦٣﴾

६३. अतः तिमीहरू अल्लाहका सामुन्ने साष्टाङ्ग प्रणाम गर, तथा (उनकै) उपासना गर ।

سُوْرَةُ الْقَمَرِ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ سِتٌّ وَّخَمْسُوْنَ اٰيَةً وَّثَلٰثَةُ رُكُوْعَاتٍ

## अल्-क़मर

(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

اِقْتَرَبَتِ السَّاعَةُ وَانْشَقَّ الْقَمَرُ ②

२. (निर्धारित) घडी अति निकट आइपुगेको छ, तथा चन्द्रमा फुट्यो।

وَاِنْ يَّرَوْا اٰيَةً يُّعْرِضُوْا وَيَقُوْلُوْا سِحْرٌ مُّسْتَمِرٌّ ③

३. तथा यदि तिनीहरूले कुनै चिह्न देखेमा, तिनीहरू विमुख हुन्छन् र भन्छन् "यो ता एउटा चल्दै आएको जादू (को कौशल) हो ।"

وَكَذَّبُوْا وَاتَّبَعُوْٓا اَهْوَآءَهُمْ وَكُلُّ اَمْرٍ مُّسْتَقِرٌّ ④

४. तिनीहरूले (सत्यलाई) अस्वीकार गरे तथा आफ्नै मनोवाञ्छाका पछि लागे । परन्तु अल्लाहको हरेक आदेश निश्चयपूर्वक (पूरा) भएरै छाड्छ ।

وَلَقَدْ جَآءَهُمْ مِّنَ الْاَنْۢبَآءِ مَا فِيْهِ مُزْدَجَرٌ ⑤

५. तथा तिनीहरूलाई त्यो विशेष खबर प्राप्त भइसकेको छ जसमा चेतावनी रहेको छ–

حِكْمَةٌۢ بَالِغَةٌ فَمَا تُغْنِ النُّذُرُ ⑥

६. प्रभावकारी ज्ञान, परन्तु (त्यस) चेतावनीले तिनीहरूलाई केही फाइदा दिएन

فَتَوَلَّ عَنْهُمْ ۘ يَوْمَ يَدْعُ الدَّاعِ اِلٰى شَيْءٍ نُّكُرٍ ⑦

७. अत: तिमी तिनीहरूबाट विमुख होउ । त्यसदिन जब एउटा आह्वानकारीले (तिनीहरूलाई) मन नपर्ने कुरोतर्फ आह्वान गर्नेछ,

خُشَّعًا اَبْصَارُهُمْ يَخْرُجُوْنَ مِنَ الْاَجْدَاثِ كَاَنَّهُمْ جَرَادٌ مُّنْتَشِرٌ ⑧

८. तब तिनीहरूका नेत्रहरू झुकेका हुनेछन् र तिनीहरू (आफ्ना) चिहानबाट यस प्रकार बाहिर निस्कने छन् मानौं तिनीहरू यताउता छरिएका फट्याङ्ग्राहरू हुन्

مُّهْطِعِيْنَ اِلَى الدَّاعِ ۗ يَقُوْلُ الْكٰفِرُوْنَ هٰذَا يَوْمٌ عَسِرٌ ⑨

९. आह्वानकर्तातर्फ चाँडो दौडिँदै

जानेछन् । अविश्वासी व्यक्तिहरूले भन्नेछन्, "यो ता अति कठिन दिन रहेको छ ।"

كَذَّبَتْ قَبْلَهُمْ قَوْمُ نُوْحٍ فَكَذَّبُوْا عَبْدَنَا وَقَالُوْا مَجْنُوْنٌ وَّازْدُجِرَ ﴿١٠﴾

१०. तिनीहरूभन्दा पहिला नूहका मानिसहरूले (सत्यलाई) अस्वीकार गरेका थिए, सुन, तिनीहरूले हाम्रा सेवकलाई अस्वीकार गरे र भने, "यो एउटा पागल र धुत्कारिएको व्यक्ति हो ।"

فَدَعَا رَبَّهٗٓ اَنِّيْ مَغْلُوْبٌ فَانْتَصِرْ ﴿١١﴾

११. अत: उनले आफ्ना प्रतिपालकका चरणमा (के भन्दै) प्रार्थना गरे (भने), म पराजित भएको छु, त्यसकारण तिमी (मेरो) सहयोगका लागि आऊ ।

فَفَتَحْنَآ اَبْوَابَ السَّمَآءِ بِمَآءٍ مُّنْهَمِرٍ ﴿١٢﴾

१२. तब माथिबाट खस्ने पानीद्वारा हामीले आकाशका ढोकाहरू खोल्यौं,

وَّفَجَّرْنَا الْاَرْضَ عُيُوْنًا فَالْتَقَى الْمَآءُ عَلٰٓى اَمْرٍ قَدْ قُدِرَ ﴿١٣﴾

१३. तथा पृथ्वीमा हामीले पानीका मूलहरू फुटायौं, अत: (दुइवटा मूलका) पानीहरू एउटा पूर्व निर्णित उद्देश्यप्रति एकजुट भए ।

وَحَمَلْنٰهُ عَلٰى ذَاتِ اَلْوَاحٍ وَّدُسُرٍ ﴿١٤﴾

१४. तथा हामीले उनलाई फलेक र काँटी(द्वारा निर्मित) वस्तुमाथि वहन गऱ्यौं ।

تَجْرِيْ بِاَعْيُنِنَا جَزَآءً لِّمَنْ كَانَ كُفِرَ ﴿١٥﴾

१५. त्यो हाम्रो नेत्रका सामुन्ने चल्थ्यो: एउटा अस्वीकार गरिएको व्यक्तिको प्रतिदानस्वरूप (थियो त्यो) ।

وَلَقَدْ تَّرَكْنٰهَآ اٰيَةً فَهَلْ مِنْ مُّدَّكِرٍ ﴿١٦﴾

१६. तथा हामीले त्यसलाई (भावी पुस्ताहरूका निम्ति) एउटा चिह्न स्वरूप छाड्यौं, परन्तु कोही उपदेश ग्रहण गर्ने व्यक्ति छ र?

فَكَيْفَ كَانَ عَذَابِيْ وَنُذُرِ ﴿١٧﴾

१७. अत: मेरो दण्ड र चेतावनी कस्तो (भयानक) थियो त?

وَلَقَدْ يَسَّرْنَا الْقُرْاٰنَ لِلذِّكْرِ فَهَلْ مِنْ مُّدَّكِرٍ ﴿١٨﴾

१८. तथा निश्चितरूपमा हामीले कुरानलाई (बुझ्न र) स्मरण गर्नका निम्ति सरल बनाएका छौं । परन्तु कोही उपदेश

ग्रहण गर्ने व्यक्ति छ र?

كَذَّبَتْ عَادٌ فَكَيْفَ كَانَ عَذَابِي وَنُذُرِ ﴿١٩﴾

१९. आद (जाति) ले (सत्यलाई) अस्वीकार गरेका थिए । अत: मेरो दण्ड र चेतावनी कस्तो (भयानक) थियो त !

إِنَّا أَرْسَلْنَا عَلَيْهِمْ رِيحًا صَرْصَرًا فِي يَوْمِ نَحْسٍ مُسْتَمِرٍّ ﴿٢٠﴾

२०. हामीले तिनीहरूविरुद्ध कहिल्यै समाप्त नहुने दुर्भाग्यपूर्ण दिनमा तीव्र गतिले चल्ने आँधी पठाएका थियौं ।

تَنْزِعُ النَّاسَ كَأَنَّهُمْ أَعْجَازُ نَخْلٍ مُنْقَعِرٍ ﴿٢١﴾

२१. त्यसले मानिसहरूलाई त्यसरी उखालेर फ्याँक्यो मानौं तिनीहरू जरैसित उखालिएका खजूरका रुखहरू हुन् ।

فَكَيْفَ كَانَ عَذَابِي وَنُذُرِ ﴿٢٢﴾

२२. अत: मेरो दण्ड र चेतावनी कस्तो (भयानक) थियो त !

وَلَقَدْ يَسَّرْنَا الْقُرْآنَ لِلذِّكْرِ فَهَلْ مِنْ مُدَّكِرٍ ﴿٢٣﴾

२३. तथा निश्चितरूपमा हामीले कुरानलाई (बुझ्न र) स्मरण गर्नका निम्ति सरल बनाएका छौं । परन्तु के कोही उपदेश ग्रहण गर्ने व्यक्ति छ र?

كَذَّبَتْ ثَمُودُ بِالنُّذُرِ ﴿٢٤﴾

२४. समुद (जाति)ले (पनि) सावधान कर्ताहरूलाई अस्वीकार गरेका थिए

فَقَالُوا أَبَشَرًا مِنَّا وَاحِدًا نَتَّبِعُهُ إِنَّا إِذًا لَفِي ضَلَالٍ وَسُعُرٍ ﴿٢٥﴾

२५. तथा तिनीहरूले भनेका थिए, "के ! हामी हामीहरूमध्यकै एउटा एक्लो व्यक्तिका अनुयायी बन्नेछौं त? त्यसो गरेमा हामी अवश्य खुल्लम खुल्ला पथभ्रष्टतामा पर्नेछौं र पागलपन (का शिकार) हुनेछौं ।

أَأُلْقِيَ الذِّكْرُ عَلَيْهِ مِنْ بَيْنِنَا بَلْ هُوَ كَذَّابٌ أَشِرٌ ﴿٢٦﴾

२६. के हामीहरूमध्ये (केवल) त्यहीप्रति उपदेश(ग्रन्थ) अवतीर्ण गरिएको छ त? होइन, (अपितु) त्यो व्यक्ति घमण्डी, मिथ्यावादी रहेको छ ।"

سَيَعْلَمُونَ غَدًا مَنِ الْكَذَّابُ الْأَشِرُ ﴿٢٧﴾

२७. को घमण्डी मिथ्यावादी रहेको छ भन्ने कुरा तिनीहरूले भोलि नै जान्नेछन् ।

إِنَّا مُرْسِلُوا النَّاقَةِ فِتْنَةً لَّهُمْ فَارْتَقِبْهُمْ وَاصْطَبِرْ ﴿٢٨﴾

२८. हामी तिनीहरूको परीक्षास्वरूप एउटा पोथी उँटलाई पठाउनेछौं अतः( ए सालिह) ! तिनीहरूप्रति दृष्टि राख र धैर्यधारण गर ।

وَنَبِّئْهُمْ أَنَّ الْمَاءَ قِسْمَةٌ بَيْنَهُمْ ۖ كُلُّ شِرْبٍ مُّحْتَضَرٌ ﴿٢٩﴾

२९. "तथा तिनीहरूका बीचमा पानीको भागबण्डा गरिएको छ, हरेक पानी पिउने समयको निरीक्षण हुनेछ" भनी तिनीहरूलाई भन ।

فَنَادَوْا صَاحِبَهُمْ فَتَعَاطَىٰ فَعَقَرَ ﴿٣٠﴾

३०. परन्तु तिनीहरूले आफ्नो मुखियालाई बोलाए, तथा त्यो आक्रमण गर्न तत्पर भयो र त्यसको घुँडा पछिका नाडीहरू काट्यो ।

فَكَيْفَ كَانَ عَذَابِي وَنُذُرِ ﴿٣١﴾

३१. अतः मेरो दण्ड र चेतावनी कस्तो (भयानक) थियो त ।

إِنَّا أَرْسَلْنَا عَلَيْهِمْ صَيْحَةً وَاحِدَةً فَكَانُوا كَهَشِيمِ الْمُحْتَظِرِ ﴿٣٢﴾

३२. हामीले तिनीहरूविरुद्ध एउटै विस्फोट पठायौं तथा तिनीहरू फ्याँकिएका सुकेका ठुटाहरूसदृश हुनपुगे ।

وَلَقَدْ يَسَّرْنَا الْقُرْآنَ لِلذِّكْرِ فَهَلْ مِن مُّدَّكِرٍ ﴿٣٣﴾

३३. तथा निश्चितरूपमा हामीले कुरानलाई (बुझ्न र) स्मरण गर्नका निम्ति सरल बनाएका छौं । परन्तु कोही उपदेश ग्रहण गर्ने व्यक्ति छ र?

كَذَّبَتْ قَوْمُ لُوطٍ بِالنُّذُرِ ﴿٣٤﴾

३४. लूतका मानिसहरूले (पनि) सावधानकर्ता- हरूलाई अस्वीकार गरेका थिए ।

إِنَّا أَرْسَلْنَا عَلَيْهِمْ حَاصِبًا إِلَّا آلَ لُوطٍ ۖ نَّجَّيْنَاهُم بِسَحَرٍ ﴿٣٥﴾

३५. हामीले तिनीहरूमाथि पत्थरका गिट्टीयुक्त आँधी चलायौं, सिवाय लूतका परिवारबाहेक, जसलाई हामीले बिहानीपख उद्धार गरेका थियौं,

نِّعْمَةً مِّنْ عِندِنَا ۚ كَذَٰلِكَ نَجْزِي مَن شَكَرَ ﴿٣٦﴾

३६. हाम्रा तर्फबाट अनुग्रहस्वरूप । कृतज्ञ व्यक्तिलाई हामी यसै प्रकार प्रतिदान दिनेगर्छौं ।

३७. तथा उनले तिनीहरूलाई हाम्रो दण्डबाट सावधान गरेका थिए, परन्तु तिनीहरूले त्यस चेतावनीप्रति सन्देह गरे ।

وَلَقَدْ أَنذَرَهُم بَطْشَتَنَا فَتَمَارَوْا بِالنُّذُرِ ﴿٣٦﴾

३८. तथा तिनीहरूले (छलपूर्वक) उनलाई उनका अतिथिहरूविरुद्ध धुर्तताकासाथ बहकाउन चाहे । अतः हामीले तिनीहरूका नेत्रहरूलाई अन्धा तुल्यायौं, "(तथा भन्यौं) तिमीहरू अब मेरो दण्ड र मेरो चेतावनी चाख ।

وَلَقَدْ رَاوَدُوهُ عَن ضَيْفِهِ فَطَمَسْنَا أَعْيُنَهُمْ فَذُوقُوا عَذَابِي وَنُذُرِ ﴿٣٧﴾

३९. तथा तिनीहरूमाथि बिहानै एउटा दीर्घस्थायी दण्ड अवतीर्ण भयो ।

وَلَقَدْ صَبَّحَهُم بُكْرَةً عَذَابٌ مُّسْتَقِرٌّ ﴿٣٨﴾

४०. "अब तिमीहरू मेरो दण्ड र मेरो चेतावनी (को स्वाद) चाख ।

فَذُوقُوا عَذَابِي وَنُذُرِ ﴿٣٩﴾

४१. तथा निश्चितरूपमा हामीले कुरानलाई (बुझ्न र) स्मरण गर्नका निम्ति सरल बनाएका छौं । परन्तु के काही उपदेश ग्रहण गर्ने व्यक्ति छ र?

وَلَقَدْ يَسَّرْنَا الْقُرْآنَ لِلذِّكْرِ فَهَلْ مِن مُّدَّكِرٍ ﴿٤٠﴾

४२. तथा फिरौनका मानिसहरूतर्फ (पनि) निश्चयपूर्वक सावधानकर्ताहरू आएका थिए

وَلَقَدْ جَاءَ آلَ فِرْعَوْنَ النُّذُرُ ﴿٤١﴾

४३. तिनीहरूले हाम्रा सम्पूर्ण चिह्नहरूलाई अस्वीकार गरे । अतः हामीले तिनीहरूलाई परम पराक्रमी (र) सर्वशक्तिमानले समातेझैं समात्यौं ।

كَذَّبُوا بِآيَاتِنَا كُلِّهَا فَأَخَذْنَاهُمْ أَخْذَ عَزِيزٍ مُّقْتَدِرٍ ﴿٤٢﴾

४४. के तिमीहरूका अविश्वासीहरू तिनीहरूभन्दा उत्तम रहेका छन्? अथवा के धर्मग्रन्थहरूमा तिमीहरूका निम्ति कुनै प्रकारको छुट रहेको छ?

أَكُفَّارُكُمْ خَيْرٌ مِّنْ أُولَٰئِكُمْ أَمْ لَكُم بَرَاءَةٌ فِي الزُّبُرِ ﴿٤٣﴾

४५. के "हामी ता विजयी जमात रहेका छौं" भनी तिनीहरू भन्छन्?

أَمْ يَقُولُونَ نَحْنُ جَمِيعٌ مُّنتَصِرٌ ﴿٤٤﴾

४६. त्यस जमातलाई शीघ्र नै पूर्णरूपमा पराजित गरिनेछ र तिनीहरू पिठ्यूँ फेरेर

سَيُهْزَمُ الْجَمْعُ وَيُوَلُّونَ الدُّبُرَ ﴿٤٥﴾

(भाग्नेछन्) ।

بَلِ السَّاعَةُ مَوْعِدُهُمْ وَالسَّاعَةُ أَدْهَىٰ وَأَمَرُّ ﴿٤٦﴾

४७. सुन, त्यो घडी तिनीहरूको निर्धारित समय रहेको छ, तथा त्यो घडी अति सङ्कटपूर्ण र अति कठोर हुनेछ ।

إِنَّ الْمُجْرِمِينَ فِي ضَلَالٍ وَسُعُرٍ ﴿٤٧﴾

४८. निश्चय नै, अपराधी व्यक्तिहरू (स्पष्टरूपमा) पथभ्रष्ट र पागल हुनपुगेका छन् ।

يَوْمَ يُسْحَبُونَ فِي النَّارِ عَلَىٰ وُجُوهِهِمْ ذُوقُوا مَسَّ سَقَرَ ﴿٤٨﴾

४९. त्यसदिन जब तिनीहरूलाई घोप्टो पारी अग्निमा घिस्याइने छ, (तथा तिनीहरूलाई भनिनेछ),– "तिमीहरू नर्कको दण्ड चाख ।"

إِنَّا كُلَّ شَيْءٍ خَلَقْنَاهُ بِقَدَرٍ ﴿٤٩﴾

५०. वस्तुत: हामीले हरेक वस्तु (उचित) परिमाणमा सृष्टि (उत्पन्न) गरेका छौं ।

وَمَا أَمْرُنَا إِلَّا وَاحِدَةٌ كَلَمْحٍ بِالْبَصَرِ ﴿٥٠﴾

५१. तथा हाम्रो आदेश आँखा झिम्किएझैं केवल एउटै (शब्दमा पालना) हुन्छ !

وَلَقَدْ أَهْلَكْنَا أَشْيَاعَكُمْ فَهَلْ مِن مُّدَّكِرٍ ﴿٥١﴾

५२. तथा हामीले (तिमीहरूभन्दा पहिलाका) मानिसहरूलाई ध्वस्त पारेका छौं, जो तिमीहरूजस्तै थिए । परन्तु के कोही उपदेश ग्रहण गर्ने व्यक्ति छ र?

وَكُلُّ شَيْءٍ فَعَلُوهُ فِي الزُّبُرِ ﴿٥٢﴾

५३. तथा तिनीहरूले गरेका कार्यहरू पुस्तकमा
(लिपिवद्ध) रहेका छन् ।

وَكُلُّ صَغِيرٍ وَكَبِيرٍ مُّسْتَطَرٌ ﴿٥٣﴾

५४. तथा हरेक सानु र ठूलो कुरो त्यसमा लेखेर राखिएको छ ।

إِنَّ الْمُتَّقِينَ فِي جَنَّاتٍ وَنَهَرٍ ﴿٥٤﴾

५५. धर्मनिष्ठ व्यक्तिहरू निस्सन्देह बगैंचाहरू र जलप्रवाहरूका बीचमा रहने छन्,

فِي مَقْعَدِ صِدْقٍ عِندَ مَلِيكٍ مُّقْتَدِرٍ ﴿٥٥﴾

५६. सत्यपूर्ण स्थानमा, सर्वशक्तिमान सम्राटका निकट ।

سُورَةُ الرَّحْمٰنِ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ تِسْعٌ وَّسَبْعُونَ اٰيَةً وَّثَلٰثَةُ رُكُوعَاتٍ

## अल्-रहमान
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①
१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

اَلرَّحْمٰنُ ②
२. (ती) परम कृपालु (अल्लाह),

عَلَّمَ الْقُرْاٰنَ ③
३. जसले कुरान सिकाएका हुन् ।

خَلَقَ الْاِنْسَانَ ④
४. उनले नै मानिसलाई सृष्टि गरे ।

عَلَّمَهُ الْبَيَانَ ⑤
५. उनले नै उनलाई स्पष्टरूपमा वर्णन गर्ने (कौशल) सिकाए ।

اَلشَّمْسُ وَالْقَمَرُ بِحُسْبَانٍ ⑥
६. सूर्य र चन्द्रमा (आ-आफ्नो मार्गमा) निर्धारित नियमानुसार गतिशील छन् ।

وَّالنَّجْمُ وَالشَّجَرُ يَسْجُدٰنِ ⑦
७. तथा हाँगाविहिन बिरुवाहरू र वृक्षहरू (विनम्रतापूर्वक उनकै इच्छाप्रति) समर्पित छन् ।

وَالسَّمَآءَ رَفَعَهَا وَوَضَعَ الْمِيْزَانَ ⑧
८. तथा आकाशलाई उनले उच्च तुल्याएका छन् र एउटा मापदण्ड निर्धारण गरेका छन्,

اَلَّا تَطْغَوْا فِي الْمِيْزَانِ ⑨
९. ताकि तिमीहरू त्यस मापदण्डको कदापि उल्लङ्घन नगर ।

وَاَقِيْمُوا الْوَزْنَ بِالْقِسْطِ وَلَا تُخْسِرُوا الْمِيْزَانَ ⑩
१०. अतः सबै वस्तुहरू न्यायपूर्वक तौलने गर र तौल घटाएर जोख्ने नगर ।

وَالْاَرْضَ وَضَعَهَا لِلْاَنَامِ ⑪
११. तथा उनले पृथ्वीलाई (आफ्ना) सृष्टिका निम्ति स्थापना गरेका हुन्,

فِيْهَا فَاكِهَةٌ وَّالنَّخْلُ ذَاتُ الْاَكْمَامِ ⑫
१२. त्यहाँ (सम्पूर्ण प्रकारका) फल र बोक्रायुक्त खजुरका वृक्षहरू रहेका छन् ।

وَالْحَبُّ ذُو الْعَصْفِ وَالرَّيْحَانُ ﴿١٢﴾

१३. तथा भुसयुक्त खाद्यान्न र सुगन्धित बुटाहरू (छन्) ।

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿١٣﴾

१४. अतः, (ए मानिसहरू र जिन्न हो), तिमीहरू दुबै आफ्ना प्रतिपालकका अनुग्रहहरूमध्ये कुन कुन कुरालाई अस्वीकार गर्छौ त ?

خَلَقَ الْإِنسَانَ مِن صَلْصَالٍ كَالْفَخَّارِ ﴿١٤﴾

१५. उनले मानिसलाई कुम्हालेको माटोसदृश सुख्खा बज्ने माटोबाट सृष्टि गरे ।

وَخَلَقَ الْجَانَّ مِن مَّارِجٍ مِّن نَّارٍ ﴿١٥﴾

१६. तथा जिन्नलाई उनले आगाको ज्वालोबाट सृष्टि गरे ।

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿١٦﴾

१७. अतः तिमीहरू दुबै आफ्ना प्रतिपालकका अनुग्रहहरूमध्ये कुन कुन कुरालाई अस्वीकार गर्छौ त ?

رَبُّ الْمَشْرِقَيْنِ وَرَبُّ الْمَغْرِبَيْنِ ﴿١٧﴾

१८. उनी दुबै पूर्वका प्रतिपालक र दुबै पश्चिमका प्रतिपालक रहेका छन् ।

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿١٨﴾

१९. अतः तिमीहरू दुबै आफ्ना प्रतिपालकका अनुग्रहहरू मध्ये कुन कुन कुरालाई अस्वीकार गर्छौ त ?

مَرَجَ الْبَحْرَيْنِ يَلْتَقِيَانِ ﴿١٩﴾

२०. वस्तुतः उनले दुइवटा समुद्रहरूलाई परस्पर जोडेर जारी गरेका छन् ।

بَيْنَهُمَا بَرْزَخٌ لَّا يَبْغِيَانِ ﴿٢٠﴾

२१. तिनीहरूका बीचमा (वर्तमान) एउटा पर्खाल रहेको छ, (फलस्वरूप) तिनीहरू एक आपसमा) प्रवेश गर्न सक्दैनन् ।

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٢١﴾

२२. अतः तिमीहरू दुबै आफ्ना प्रतिपालकका अनुग्रहरूमध्ये कुन कुन कुरालाई अस्वीकार गर्छौ त ?

يَخْرُجُ مِنْهُمَا اللُّؤْلُؤُ وَالْمَرْجَانُ ﴿٢٢﴾

२३. तिनीहरूबाट मोती र मुगाहरू निस्कने गर्छन् ।

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ

२४. अत: तिमीहरू दुबै आफ्ना प्रतिपालकका अनुग्रहहरूमध्ये कुन कुन कुरालाई अस्वीकार गर्छौ त?

وَلَهُ الْجَوَارِ الْمُنْشَآتُ فِي الْبَحْرِ كَالْأَعْلَامِ

२५. तथा उनका पर्वतसदृश उच्च जहाजहरू समुद्रमाथि खडा रहेका छन् ।

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ

२६. अत: तिमीहरू दुबै आफ्ना प्रतिपालकका अनुग्रहहरूमध्ये कुन कुन कुरालाई अस्वीकार गर्छौ त ?

كُلُّ مَنْ عَلَيْهَا فَانٍ

२७. यस (पृथ्वी)मा रहेका सम्पूर्ण वस्तुहरू अन्तमा विनाश हुनेछन् ।

وَيَبْقَىٰ وَجْهُ رَبِّكَ ذُو الْجَلَالِ وَالْإِكْرَامِ

२८. तथा तिम्रा प्रशंसा र सम्मानका स्वामी प्रतिपालकको व्यक्तित्व (मात्र) शेष रहनेछ ।

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ

२९. अत:, तिमीहरू दुबै आफ्ना प्रतिपालकका अनुग्रहहरूमध्ये कुन कुन कुरालाई अस्वीकार गर्छौ त ?

يَسْأَلُهُ مَنْ فِي السَّمَاوَاتِ وَالْأَرْضِ ۚ كُلَّ يَوْمٍ هُوَ فِي شَأْنٍ

३०. आकाशमण्डल र पृथ्वीमा रहेका सम्पूर्ण (प्राणीहरूले) उनीसित नै सहयोग याचना गर्ने गर्छन् । प्रत्येक दिन उनी भिन्न भिन्न अवस्थामा (स्वयमलाई प्रकट गर्छन् ) ।

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ

३१. अत: तिमीहरू दुबै आफ्ना प्रतिपालकका अनुग्रहहरूमध्ये कुन कुन कुरालाई अस्वीकार गर्छौ त ?

سَنَفْرُغُ لَكُمْ أَيُّهَ الثَّقَلَانِ

३२. ए दुइवटा शक्तिशाली (समूह)हरू हो, हामी शीघ्र नै तिमीहरूसमक्ष उपस्थित हुनेछौं ।

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ

३३. अत: तिमीहरू दुबै आफ्ना प्रतिपालकका अनुग्रहहरूमध्ये कुन कुन कुरालाई अस्वीकार गर्छौ त ?

يَا مَعْشَرَ الْجِنِّ وَالْإِنْسِ إِنِ اسْتَطَعْتُمْ أَنْ تَنْفُذُوا مِنْ أَقْطَارِ السَّمَاوَاتِ وَ

३४. ऐ जिन्न र मानिसका समूहहरू हो ! यदि तिमीहरूमा आकाशमण्डल र पृथ्वीको

الْأَرْضِ فَانفُذُوا ۚ لَا تَنفُذُونَ إِلَّا بِسُلْطَانٍ ﴿٣٣﴾

सीमा पार गरेर जाने क्षमता रहेको छ भने, गएर देखाऊ । परन्तु तिमीहरू प्रमाण बिना निस्केर जान सक्नेछैनौ ।

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٣٤﴾

३५. अत: तिमीहरू दुबै आफ्ना प्रतिपालकका अनुग्रहहरूमध्ये कुन कुन कुरालाई अस्वीकार गर्छौ त ?

يُرْسَلُ عَلَيْكُمَا شُوَاظٌ مِّن نَّارٍ وَنُحَاسٌ فَلَا تَنتَصِرَانِ ﴿٣٥﴾

३६. तिमीहरू विरुद्ध एउटा धूवाँरहित अग्निको लू -ज्वाला) र अग्निरहित धूवाँ(को मुस्लो) पठाइने छ; तथा तिमीहरूले परस्पर एक अर्काको सहयोग गर्न सक्नेछैनौ ।

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٣٦﴾

३७. अत: तिमीहरू दुबै आफ्ना प्रतिपालकका अनुग्रहहरूमध्ये कुन कुन कुरालाई अस्वीकार गर्छौ त ?

فَإِذَا انشَقَّتِ السَّمَاءُ فَكَانَتْ وَرْدَةً كَالدِّهَانِ ﴿٣٧﴾

३८. तथा जब आकाश फाटेर टुक्रा टुक्रा हुनेछ र त्यो रातो छालासदृश रातो हुन पुग्नेछ–

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٣٨﴾

३९. अत: तिमीहरू दुबै आफ्ना प्रतिपालकका अनुग्रहहरूमध्ये कुन कुन कुरालाई अस्वीकार गर्छौ त ?

فَيَوْمَئِذٍ لَّا يُسْأَلُ عَن ذَنبِهِ إِنسٌ وَلَا جَانٌّ ﴿٣٩﴾

४०. त्यसदिन न मानिसलाई न त जिन्नलाई नै त्यसको पापका सम्बन्धमा सोधिनेछ ।

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٤٠﴾

४१. अत: तिमीहरू दुबै आफ्ना प्रतिपालकका अनुग्रहहरूमध्ये कुन कुन कुराहरूलाई अस्वीकार गर्छौ त ?

يُعْرَفُ الْمُجْرِمُونَ بِسِيمَاهُمْ فَيُؤْخَذُ بِالنَّوَاصِي وَالْأَقْدَامِ ﴿٤١﴾

४२. अपराधीहरू तिनीहरूका दागहरूबाट चिनिने छन्, तथा तिनीहरूलाई जुल्फी र खुट्टाद्वारा समातिने छ ।

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٤٢﴾

४३. अत: तिमीहरू दुबै आफ्ना प्रतिपालकका अनुग्रहहरूमध्ये कुन कुन कुराहरूलाई अस्वीकार गर्छौ त ?

هَٰذِهِۦ جَهَنَّمُ ٱلَّتِي يُكَذِّبُ بِهَا ٱلْمُجْرِمُونَ ۝٤٤

४४. यो त्यही नर्क हो, जसलाई अपराधी व्यक्तिहरू अस्वीकार गर्ने गर्छन्,

يَطُوفُونَ بَيْنَهَا وَبَيْنَ حَمِيمٍ ءَانٍ ۝٤٥

४५. तिनीहरू त्यसको र अत्याधिक उम्लेको पानीका बीचमा घुम्नेछन् ।

فَبِأَيِّ ءَالَآءِ رَبِّكُمَا تُكَذِّبَانِ ۝٤٦

४६. अतः तिमीहरू दुबै आफ्ना प्रतिपालकका अनुग्रहहरूमध्ये कुन कुन कुराहरूलाई अस्वीकार गर्छौ त ?

وَلِمَنْ خَافَ مَقَامَ رَبِّهِۦ جَنَّتَانِ ۝٤٧

४७. परन्तु जो व्यक्ति आफ्ना प्रतिपालकको उच्च पदमर्यादाबाट डराउँछ त्यसका निम्ति दुइवटा बगैंचाहरू रहेका छन्–

فَبِأَيِّ ءَالَآءِ رَبِّكُمَا تُكَذِّبَانِ ۝٤٨

४८. अतः तिमीहरू दुबै आफ्ना प्रतिपालकका अनुग्रहहरूमध्ये कुन कुन कुरालाई अस्वीकार गर्छौ त ?

ذَوَاتَآ أَفْنَانٍ ۝٤٩

४९. दुबै धेरै प्रकारका शाखाहरूले परिपूर्ण

فَبِأَيِّ ءَالَآءِ رَبِّكُمَا تُكَذِّبَانِ ۝٥٠

५०. अतः तिमीहरू दुबै आफ्ना प्रतिपालकका अनुग्रहहरूमध्ये कुन कुन कुरालाई अस्वीकार गर्छौ त ?

فِيهِمَا عَيْنَانِ تَجْرِيَانِ ۝٥١

५१. तिनीहरू दुबैमा पानीका दुइवटा मूलहरू (स्वतन्त्ररूपले) बगिरहेका छन्

فَبِأَيِّ ءَالَآءِ رَبِّكُمَا تُكَذِّبَانِ ۝٥٢

५२. अतः तिमीहरू दुबै आफ्ना प्रतिपालकका अनुग्रहहरूमध्ये कुन कुन कुरालाई अस्वीकार गर्छौ त ?

فِيهِمَا مِن كُلِّ فَٰكِهَةٍ زَوْجَانِ ۝٥٣

५३. तिनीहरू दुबैमा हरेक (प्रकारका) फलहरू दुई-दुई किसिमका हुनेछन् ।

فَبِأَيِّ ءَالَآءِ رَبِّكُمَا تُكَذِّبَانِ ۝٥٤

५४. अतः तिमीहरू दुबै आफ्ना प्रतिपालकका अनुग्रहहरूमध्ये कुन कुन कुरालाई अस्वीकार गर्छौ त ?

مُتَّكِـِٔينَ عَلَىٰ فُرُشٍۭ بَطَآئِنُهَا مِنْ إِسْتَبْرَقٍ ۚ وَجَنَى ٱلْجَنَّتَيْنِ دَانٍ ۝٥٥

५५. (तिनीहरू सोफामा) यस्ता गलैंचामाथि ढल्किएका हुनेछन् जसको

अस्तर बहुमूल्य रेशमी कपडाको हुनेछ । तथा ती दुबै बगैंचाका पाकेका फलहरू सहजै पुग्न सकिने अवस्थामा हुनेछन् ।

५६. अतः तिमीहरू दुबै आफ्ना प्रतिपालकका अनुग्रहहरूमध्ये कुन कुन कुरालाई अस्वीकार गर्छौ त ?

فَبِاَيِّ اٰلَآءِ رَبِّكُمَا تُكَذِّبٰنِ ﴿٥٦﴾

५७. त्यहाँ नेत्र झुकाएर राख्ने (सच्चरित्र कुमारीहरू पनि) हुनेछन्, जसलाई तिनीहरूभन्दाअघि न मानिसले न त जिन्नले नै छोएको हुनेछ ।

فِيْهِنَّ قٰصِرٰتُ الطَّرْفِ ۙ لَمْ يَطْمِثْهُنَّ اِنْسٌ قَبْلَهُمْ وَلَا جَآنٌّ ﴿٥٧﴾

५८. अतः तिमीहरू दुबै आफ्ना प्रतिपालकका अनुग्रहहरूमध्ये कुन कुन कुरालाई अस्वीकार गर्छौ त ?

فَبِاَيِّ اٰلَآءِ رَبِّكُمَا تُكَذِّبٰنِ ﴿٥٨﴾

५९. मानौं तिनीहरू लालमणि र सा-साना मोतीहरू हुन् ।

كَاَنَّهُنَّ الْيَاقُوْتُ وَالْمَرْجَانُ ﴿٥٩﴾

६०. अतः तिमीहरू दुबै आफ्ना प्रतिपालकका अनुग्रहहरूमध्ये कुन कुन कुरालाई अस्वीकार गर्छौ त ?

فَبِاَيِّ اٰلَآءِ رَبِّكُمَا تُكَذِّبٰنِ ﴿٦٠﴾

६१. उपकारको प्रतिदान उपकार नै हुन्छ ।

هَلْ جَزَآءُ الْاِحْسَانِ اِلَّا الْاِحْسَانُ ﴿٦١﴾

६२. अतः तिमीहरू दुबै आफ्ना प्रतिपालकका अनुग्रहहरूमध्ये कुन कुन कुरालाई अस्वीकार गर्छौ त ?

فَبِاَيِّ اٰلَآءِ رَبِّكُمَا تُكَذِّبٰنِ ﴿٦٢﴾

६३. तथा ती दुइवटा बाहेक (अन्य) दुइवटा बगैंचाहरू हुनेछन्–

وَمِنْ دُوْنِهِمَا جَنَّتٰنِ ﴿٦٣﴾

६४. अतः तिमीहरू दुबै आफ्ना प्रतिपालकका अनुग्रहहरूमध्ये कुन कुन कुरालाई अस्वीकार गर्छौ त ?

فَبِاَيِّ اٰلَآءِ رَبِّكُمَا تُكَذِّبٰنِ ﴿٦٤﴾

६५. पातहरूले परिपूर्ण पूर्णतयाः हरिया हुनेछन् ।

مُدْهَآمَّتٰنِ ﴿٦٥﴾

فَبِاَيِّ اٰلَآءِ رَبِّكُمَا تُكَذِّبٰنِ

६६. अत: तिमीहरू दुबै आफ्ना प्रतिपालकका अनुग्रहहरूमध्ये कुन कुन कुरालाई अस्वीकार गर्छौ त ?

فِيْهِمَا عَيْنٰنِ نَضَّاخَتٰنِ

६७. त्यहाँ (पनि) दुइवटा पानीका मूलहरू फुटिरहेका हुनेछन् ।

فَبِاَيِّ اٰلَآءِ رَبِّكُمَا تُكَذِّبٰنِ

६८. अत: तिमीहरू दुबै आफ्ना प्रतिपालकका अनुग्रहहरूमध्ये कुन कुन कुरालाई अस्वीकार गर्छौ त ?

فِيْهِمَا فَاكِهَةٌ وَّ نَخْلٌ وَّ رُمَّانٌ

६९. तिनीहरू दुबैमा (सबै प्रकारका) फलहरू र खजूर तथा अनार हुनेछन् ।

فَبِاَيِّ اٰلَآءِ رَبِّكُمَا تُكَذِّبٰنِ

७०. अत: तिमीहरू दुबै आफ्ना प्रतिपालकका अनुग्रहहरूमध्ये कुन कुन कुरालाई अस्वीकार गर्छौ त ?

فِيْهِنَّ خَيْرٰتٌ حِسَانٌ

७१. त्यहाँ पवित्र (र) सुन्दर (कुमारीहरू) हुनेछन्–

فَبِاَيِّ اٰلَآءِ رَبِّكُمَا تُكَذِّبٰنِ

७२. अत: तिमीहरू दुबै आफ्ना प्रतिपालकका अनुग्रहहरूमध्ये कुन कुन कुरालाई अस्वीकार गर्छौ त ?–

حُوْرٌ مَّقْصُوْرٰتٌ فِى الْخِيَامِ

७३. सुन्दर काला नेत्रयुक्त महिलाहरू, शिविरभित्र सुरक्षित राखिएका हुनेछन्–

فَبِاَيِّ اٰلَآءِ رَبِّكُمَا تُكَذِّبٰنِ

७४. अत: तिमीहरू दुबै आफ्ना प्रतिपालकका अनुग्रहहरूमध्ये कुन कुन कुरालाई अस्वीकार गर्छौ त ?–

لَمْ يَطْمِثْهُنَّ اِنْسٌ قَبْلَهُمْ وَلَا جَآنٌّ

७५. जसलाई तिनीहरूभन्दा पहिला न मानिसले न त जिन्नले नै छोएको हुनेछ–

فَبِاَيِّ اٰلَآءِ رَبِّكُمَا تُكَذِّبٰنِ

७६. अत: तिमीहरू दुबै आफ्ना प्रतिपालकका अनुग्रहहरूमध्ये कुन कुन कुरालाई अस्वीकार गर्छौ त ?–

مُتَّكِـِٔيْنَ عَلٰى رَفْرَفٍ خُضْرٍ وَّعَبْقَرِيٍّ حِسَانٍ ﴿٧٦﴾

७७. तिनीहरू उत्तम गलैंचामाथि हरिया सिरानीहरूमा ढल्किरहेका हुनेछन् ।

فَبِاَيِّ اٰلَاۤءِ رَبِّكُمَا تُكَذِّبٰنِ ﴿٧٧﴾

७८. अतः तिमीहरू दुबै आफ्ना प्रतिपालकका अनुग्रहहरूमध्ये कुन कुन कुरालाई अस्वीकार गर्छौ त ?

تَبٰرَكَ اسْمُ رَبِّكَ ذِى الْجَلٰلِ وَالْاِكْرَامِ ﴿٧٨﴾

७९. तिम्रा गौरव र सम्मानका स्वामी प्रतिपालकको नाम अति नै मङ्गलमय रहेको छ ।




## अल्–वाकि'अः
(हिजरतअघि अवतरित)

१. परम कृपालु, परम दयालु अल्लाहको नाममा ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

२. जब त्यो निश्चित घटना घट्नेछ–

اِذَا وَقَعَتِ الْوَاقِعَةُ ②

३. त्यो घटना घट्ने कुरालाई अस्वीकार गर्न सकिनेछैन–

لَيْسَ لِوَقْعَتِهَا كَاذِبَةٌ ③

४. केहीलाई तल झार्ने तथा अन्य केहीलाई माथि उठाउने ।

خَافِضَةٌ رَّافِعَةٌ ④

५. जब पृथ्वीलाई (भयानक) कम्पनद्वारा हल्लाइनेछ,

اِذَا رُجَّتِ الْاَرْضُ رَجًّا ⑤

६. तथा पर्वतहरूलाई (पूर्णतयाः) टुका-टुका पारिनेछ ।

وَّبُسَّتِ الْجِبَالُ بَسًّا ⑥

७. तिनीहरू (सबै) चौतर्फी छरिएको धुलो माटोसदृश हुन पुग्नेछन्,

فَكَانَتْ هَبَآءً مُّنْۢبَثًّا ⑦

८. तथा तिमीहरू तीन समूहमा विभाजित) हुनेछौः

وَّكُنْتُمْ اَزْوَاجًا ثَلٰثَةً ⑧

९. तथा दाहिनेतर्फका व्यक्तिहरू, तथा ती दाहिनेतर्फका व्यक्तिहरू कस्ता रहेका छन् !

فَاَصْحٰبُ الْمَيْمَنَةِ ۙ مَآ اَصْحٰبُ الْمَيْمَنَةِ ⑨

१०. तथा बायाँतर्फका व्यक्तिहरू, तथा ती बायाँतर्फका व्यक्तिहरू कस्ता रहेका छन् !

وَاَصْحٰبُ الْمَشْـَٔمَةِ ۙ مَآ اَصْحٰبُ الْمَشْـَٔمَةِ ⑩

११. (तेस्रो) सबैभन्दा अघि रहने (व्यक्तिहरू); तिनीहरू (वास्तवमै) सबैभन्दा अघिरहने व्यक्तिहरू रहेका छन्;

وَالسّٰبِقُوْنَ السّٰبِقُوْنَ ⑪

१२. तिनीहरू (अल्लाहको) सान्निध्यता

اُولٰٓئِكَ الْمُقَرَّبُوْنَ ⑫

प्राप्त व्यक्तिहरू हुनेछन् ।

فِيْ جَنّٰتِ النَّعِيْمِ ﴿١٢﴾

१३. (तिनीहरू) वैभवपूर्ण बगैंचामा (हुनेछन्) ।

ثُلَّةٌ مِّنَ الْاَوَّلِيْنَ ﴿١٣﴾

१४. प्रारम्भिक मानिसहरूमध्येको एउटा ठूलो समूह,

وَقَلِيْلٌ مِّنَ الْاٰخِرِيْنَ ﴿١٤﴾

१५. तथा पछिका मानिसहरूमध्येबाट अति कम सङ्ख्यामा,

عَلٰى سُرُرٍ مَّوْضُوْنَةٍ ﴿١٥﴾

१६. (सुन र ज्वाहारात) जडित शैय्यामा (बसेका हुनेछन्)

مُّتَّكِـِٕيْنَ عَلَيْهَا مُتَقٰبِلِيْنَ ﴿١٦﴾

१७. त्यसमाथि परस्पर मुखामुख भई ढल्किनेछन् ।

يَطُوْفُ عَلَيْهِمْ وِلْدَانٌ مُّخَلَّدُوْنَ ﴿١٧﴾

१८. नवयुवक सेवकहरू तिनीहरूको सेवामा उपस्थित रहनेछन्, तिनीहरू अधिक उमेरका हुनेछैनन्, चिरञ्जीवी हुनेछन् ।

بِاَكْوَابٍ وَّاَبَارِيْقَ ۙ وَكَاْسٍ مِّنْ مَّعِيْنٍ ﴿١٨﴾

१९. बग्दो मूलको पानी(ले भरिए)का प्याला र सुराही तथा कपहरू लिएर (हिँड्नेछन्)

لَّا يُصَدَّعُوْنَ عَنْهَا وَلَا يُنْزِفُوْنَ ﴿١٩﴾

२०. त्यसबाट न तिनीहरूको टाउको दुख्नेछ न त मात नै लाग्नेछ ।

وَفَاكِهَةٍ مِّمَّا يَتَخَيَّرُوْنَ ﴿٢٠﴾

२१. तथा तिनीहरूका मनोवाञ्छित फलहरू (लिएर आउनेछन्)-

وَلَحْمِ طَيْرٍ مِّمَّا يَشْتَهُوْنَ ﴿٢١﴾

२२. तथा तिनीहरूले चाहेअनुसारका पक्षीहरूको मासु ।

وَحُوْرٌ عِيْنٌ ﴿٢٢﴾

२३. तथा सुन्दर, ठुला ठुला नेत्रयुक्त युवतीहरू (त्यहाँ हुनेछन्) ।

كَاَمْثَالِ اللُّؤْلُؤِ الْمَكْنُوْنِ ﴿٢٣﴾

२४. राम्ररी ढाकिएका तथा सुरक्षित राखिएका मोतीहरूसदृश,

جَزَآءًۢ بِمَا كَانُوْا يَعْمَلُوْنَ ﴿٢٤﴾

२५. तिनीहरूले गरेको कार्यहरूको प्रतिदानस्वरूप ।

لَا يَسْمَعُوْنَ فِيْهَا لَغْوًا وَّلَا تَاْثِيْمًا ﴿٢٥﴾

२६. त्यहाँ तिनीहरूले कुनै व्यर्थ अथवा पापयुक्त कुरा सुन्नेछैनन्,

اِلَّا قِيْلًا سَلٰمًا سَلٰمًا ﴿٢٦﴾

२७. परन्तु (केवल अभिवादनका) 'शान्ति, शान्ति' भन्ने शब्द मात्र ।

وَاَصْحٰبُ الْيَمِيْنِ ۙ مَآ اَصْحٰبُ الْيَمِيْنِ ﴿٢٧﴾

२८. दायाँतर्फका व्यक्तिहरू, तथा ती दायाँतर्फका व्यक्तिहरू कस्ता रहेका छन् !

فِيْ سِدْرٍ مَّخْضُوْدٍ ﴿٢٨﴾

२९. (तिनीहरू) काँडाविहीन बयरका वृक्षहरूमनि रहनेछन्,

وَّطَلْحٍ مَّنْضُوْدٍ ﴿٢٩﴾

३०. तथा घरीयुक्त केराका (वृक्षहरू),

وَّظِلٍّ مَّمْدُوْدٍ ﴿٣٠﴾

३१. तथा विस्तृत छाया (मनि),

وَّمَآءٍ مَّسْكُوْبٍ ﴿٣١﴾

३२. तथा बग्दो पानी,

وَّفَاكِهَةٍ كَثِيْرَةٍ ﴿٣٢﴾

३३. तथा प्रशस्त फलहरू(मा),

لَّا مَقْطُوْعَةٍ وَّلَا مَمْنُوْعَةٍ ﴿٣٣﴾

३४. न कमी गरिनेछ न त बाधा गरिनेछ,

وَّفُرُشٍ مَّرْفُوْعَةٍ ﴿٣٤﴾

३५. तथा (तिनीहरूलाई) उत्तम जोडीहरू (प्राप्त हुनेछन्)

اِنَّآ اَنْشَاْنٰهُنَّ اِنْشَآءً ﴿٣٥﴾

३६. वस्तुत:,हामीले नै तिनीहरूलाई (असल) सृष्टिस्वरूप सृष्टि गर्‍यौं,

فَجَعَلْنٰهُنَّ اَبْكَارًا ﴿٣٦﴾

३७. तथा तिनीहरूलाई कुमारी बनायौं,

عُرُبًا اَتْرَابًا ﴿٣٧﴾

३८. मनमोहक, समवयस्क

لِّاَصْحٰبِ الْيَمِيْنِ ﴿٣٨﴾

३९. दायाँतर्फका व्यक्तिहरूका निम्ति ।

ثُلَّةٌ مِّنَ الْاَوَّلِيْنَ ﴿٣٩﴾

४०. प्रारम्भिक -व्यक्ति)हरूमध्येबाट एउटा ठूलो समूह,

وَثُلَّةٌ مِّنَ الْاٰخِرِيْنَ

४१. तथा पछिकाहरूबाट एउटा ठूलो समूह ।

وَاَصْحٰبُ الشِّمَالِ ۙ مَآ اَصْحٰبُ الشِّمَالِ

४२. तथा ती बायाँतर्फका व्यक्तिहरू, ती बायाँतर्फका व्यक्तिहरू कस्ता रहेका छन् !–

فِيْ سَمُوْمٍ وَّحَمِيْمٍ

४३. (तिनीहरू) अत्याधिक तातो हावा र तातो पानीका बीचमा हुनेछन् ।

وَّظِلٍّ مِّنْ يَّحْمُوْمٍ

४४. तथा कालो धूवाँको छायामुनि,

لَّا بَارِدٍ وَّلَا كَرِيْمٍ

४५. त्यो न चिसो हुनेछ न त लाभदायक नै ।

اِنَّهُمْ كَانُوْا قَبْلَ ذٰلِكَ مُتْرَفِيْنَ

४६. त्यसअघि तिनीहरूले आरामदायक र वैभवपूर्ण जीवनयापन गरेका थिए

وَكَانُوْا يُصِرُّوْنَ عَلَى الْحِنْثِ الْعَظِيْمِ

४७. तथा अत्याधिक पापयुक्त कार्यहरू प्रति हठधर्मीपूर्वक व्यस्त रहने गर्थे ।

وَكَانُوْا يَقُوْلُوْنَ ۙ اَئِذَا مِتْنَا وَكُنَّا تُرَابًا وَّعِظَامًا ءَاِنَّا لَمَبْعُوْثُوْنَ

४८. तथा तिनीहरू (के) भन्ने गर्थे (भन), "के ! जब हामी मरेर धुलो र हड्डीहरूमा परिणत हुन्छौं, तब के हामीलाई पुनः उठाइने छ ।

اَوَاٰبَآؤُنَا الْاَوَّلُوْنَ

४९. तथा हाम्रा अतीतका पुर्खाहरूलाई समेत ?"

قُلْ اِنَّ الْاَوَّلِيْنَ وَالْاٰخِرِيْنَ

५०. तिमी भन, "(हो), पहिलाका र पछिका (सबैलाई)

لَمَجْمُوْعُوْنَ ۙ اِلٰى مِيْقَاتِ يَوْمٍ مَّعْلُوْمٍ

५१. (सबैलाई) एउटा निर्धारित दिनको निश्चित समयमा एकत्रित गरेर लगिनेछ ।"

ثُمَّ اِنَّكُمْ اَيُّهَا الضَّآلُّوْنَ الْمُكَذِّبُوْنَ

५२. त्यसपछि, हे पथभ्रष्ट भएका र (सत्यका) अस्वीकारी हुनपुगेका व्यक्तिहरू हो,

لَاٰكِلُوْنَ مِنْ شَجَرٍ مِّنْ زَقُّوْمٍ

५३. तिमीहरू जककुमको वृक्षबाट

खानेछौ,

فَمَالِـُٔوْنَ مِنْهَا الْبُطُوْنَ ۝٥٣

५४. तथा त्यसैद्वारा तिमीहरूले पेट भर्नेछौ,

فَشٰرِبُوْنَ عَلَيْهِ مِنَ الْحَمِيْمِ ۝٥٤

५५. तथा त्यसपछि उम्लँदो तातो पानी पिउनेछौ,

فَشٰرِبُوْنَ شُرْبَ الْهِيْمِ ۝٥٥

५६. अतिशय प्यासले आतुर भएको उँटले पिएभैं (पिउनेछौ) ।"

هٰذَا نُزُلُهُمْ يَوْمَ الدِّيْنِ ۝٥٦

५७. निर्णयका दिन यही नै तिनीहरूको आतिथ्य हुनेछ ।

نَحْنُ خَلَقْنٰكُمْ فَلَوْلَا تُصَدِّقُوْنَ ۝٥٧

५८. हामीले नै तिमीहरूलाई सृष्टि गरेका हौं । अतः तिमीहरू किन (यस कुरालाई) स्वीकार गर्दैनौ ?

اَفَرَءَيْتُمْ مَّا تُمْنُوْنَ ۝٥٨

५९. जुन (वीर्यका थोपा) तिमीहरू निष्कासित गर्छौ त्यसबारे तिमीहरूको के धारणा रहेको छ ?

ءَاَنْتُمْ تَخْلُقُوْنَهٗٓ اَمْ نَحْنُ الْخٰلِقُوْنَ ۝٥٩

६०. तिमीहरूले त्यसलाई सृष्टि गरेका हौ अथवा हामी त्यसका सृष्टिकर्ता हौं ?

نَحْنُ قَدَّرْنَا بَيْنَكُمُ الْمَوْتَ وَمَا نَحْنُ بِمَسْبُوْقِيْنَ ۝٦٠

६१. हामीले तिमीहरू (सबै)का निम्ति मृत्यु नियुक्त गरेका छौं, तथा कसैले हामीलाई रोक्न सक्दैन,

عَلٰٓى اَنْ نُّبَدِّلَ اَمْثَالَكُمْ وَنُنْشِئَكُمْ فِيْ مَا لَا تَعْلَمُوْنَ ۝٦١

६२. तिमीहरूको (वर्तमान) आकृति परिवर्तन गर्नबाट र तिमीहरूलाई कुनै यस्तो वस्तु (आकृति) मा ढाल्नबाट जसबारे तिमीहरूलाई केही ज्ञान छैन ।

وَلَقَدْ عَلِمْتُمُ النَّشْاَةَ الْاُوْلٰى فَلَوْلَا تَذَكَّرُوْنَ ۝٦٢

६३. तथा पहिलो सृष्टिलाई तिमीहरूले निश्चयपूर्वक जानिसकेका छौ । अतः तिमीहरू किन उपदेश ग्रहण गर्दैनौ ?

اَفَرَءَيْتُمْ مَّا تَحْرُثُوْنَ ۝٦٣

६४. जुन कुरा तिमीहरू रोप्छौ त्यसबारे

तिमीहरूलाई केही थाहा छ ?

ءَاَنْتُمْ تَزْرَعُوْنَهٗٓ اَمْ نَحْنُ الزّٰرِعُوْنَ ﴿٦٤﴾

६५. तिमीहरू त्यसलाई उमाछौं अथवा हामी त्यसलाई उमाछौं ?

لَوْ نَشَآءُ لَجَعَلْنٰهُ حُطَامًا فَظَلْتُمْ تَفَكَّهُوْنَ ﴿٦٥﴾

६६. यदि हामीले चाहेका भए, त्यसलाई भुसमा परिणत गर्न सक्नेथियौं, तब तिमीहरू विलाप गर्दै बस्नेथियौ :

اِنَّا لَمُغْرَمُوْنَ ﴿٦٦﴾

६७. हामी ता बरबाद भयौं !

بَلْ نَحْنُ مَحْرُوْمُوْنَ ﴿٦٧﴾

६८. होइन, (अपितु) हामी (सबै कुराबाट) वञ्चित हुन पुगेका छौं ।"

اَفَرَءَيْتُمُ الْمَآءَ الَّذِيْ تَشْرَبُوْنَ ﴿٦٨﴾

६९. तिमीहरूले त्यस पानीलाई देखेका छौ, जसलाई तिमीहरू पिउने गर्छौ ?

ءَاَنْتُمْ اَنْزَلْتُمُوْهُ مِنَ الْمُزْنِ اَمْ نَحْنُ الْمُنْزِلُوْنَ ﴿٦٩﴾

७०. तिमीहरू नै त्यसलाई बादलबाट तल उतार्छौ, अथवा हामी उतार्छौं ?

لَوْ نَشَآءُ جَعَلْنٰهُ اُجَاجًا فَلَوْلَا تَشْكُرُوْنَ ﴿٧٠﴾

७१. यदि हामीले चाहेका भए, त्यसलाई तितो बनाउन सक्नेथियौं । अतः तिमीहरू किन कृतज्ञ बन्दैनौ ?

اَفَرَءَيْتُمُ النَّارَ الَّتِيْ تُوْرُوْنَ ﴿٧١﴾

७२. जुन अग्निलाई तिमीहरू बाल्छौ, के त्यसबारे तिमीहरूलाई केही थाहा छ ?

ءَاَنْتُمْ اَنْشَاْتُمْ شَجَرَتَهَآ اَمْ نَحْنُ الْمُنْشِـُٔوْنَ ﴿٧٢﴾

७३. तिमीहरू नै त्यसका निम्ति वृक्ष उत्पन्न गर्छौ, अथवा हामी उत्पन्न गर्छौं ?

نَحْنُ جَعَلْنٰهَا تَذْكِرَةً وَّ مَتَاعًا لِّلْمُقْوِيْنَ ﴿٧٣﴾

७४. हामीले त्यसलाई एउटा उपदेश र यात्रीहरूका निम्ति लाभदायक बनाएका छौं

فَسَبِّحْ بِاسْمِ رَبِّكَ الْعَظِيْمِ ﴿٧٤﴾

७५. अतः तिमी आफ्ना महिमामय प्रतिपालकको नामको गुणगान गर ।

فَلَآ اُقْسِمُ بِمَوٰقِعِ النُّجُوْمِ ﴿٧٥﴾

७६. होइन, अपितु म ताराहरू खस्ने स्थानको शपथ खान्छु–

وَاِنَّهٗ لَقَسَمٌ لَّوْ تَعْلَمُوْنَ عَظِيْمٌ ﴿٧٦﴾

७७. तथा यदि तिमीहरू जान्दछौ भने, यो

एउटा ठूलो शपथ रहेको छ–

إِنَّهُۥ لَقُرْءَانٌ كَرِيمٌ ﴿٧٧﴾

७८. अर्थात यो निश्चयपूर्वक महान कुरान रहेको छ,

فِى كِتَٰبٍ مَّكْنُونٍ ﴿٧٨﴾

७९. एउटा अत्यन्त सुरक्षित पुस्तकमा (रहेको छ),

لَّا يَمَسُّهُۥٓ إِلَّا ٱلْمُطَهَّرُونَ ﴿٧٩﴾

८०. जसलाई पवित्रता प्राप्त व्यक्तिहरूबाहेक अन्य कसैले छुन सक्दैन ।

تَنزِيلٌ مِّن رَّبِّ ٱلْعَٰلَمِينَ ﴿٨٠﴾

८१. यो विश्वब्रह्माण्डका प्रतिपालकका तर्फबाट अवतीर्ण भएको हो ।

أَفَبِهَٰذَا ٱلْحَدِيثِ أَنتُم مُّدْهِنُونَ ﴿٨١﴾

८२. अत: के यस (आध्यात्मिक) धर्मोपदेशसित तिमीहरू ढोँगपूर्ण व्यवहार गर्छौ त?

وَتَجْعَلُونَ رِزْقَكُمْ أَنَّكُمْ تُكَذِّبُونَ ﴿٨٢﴾

८३. तथा के त्यसको अस्वीकारलाई नै तिमीहरू आफ्नो जीविका(को साधन) बनाउँछौ त ?

فَلَوْلَآ إِذَا بَلَغَتِ ٱلْحُلْقُومَ ﴿٨٣﴾

८४. अत: किन, जब (मृत्युशैय्याको व्यक्तिको प्राण) कण्ठमा आइपुग्छ,

وَأَنتُمْ حِينَئِذٍ تَنظُرُونَ ﴿٨٤﴾

८५. तथा त्यस समय तिमीहरू हेर्ने गर्छौ–

وَنَحْنُ أَقْرَبُ إِلَيْهِ مِنكُمْ وَلَٰكِن لَّا تُبْصِرُونَ ﴿٨٥﴾

८६. तथा हामी भने तिमीहरूभन्दा त्यसका अधिक निकट हुन्छौं, परन्तु तिमीहरू देख्दैनौ–

فَلَوْلَآ إِن كُنتُمْ غَيْرَ مَدِينِينَ ﴿٨٦﴾

८७. अत: किन, यदि तिमीहरूको हिसाब लिइने छैन भने,

تَرْجِعُونَهَآ إِن كُنتُمْ صَٰدِقِينَ ﴿٨٧﴾

८८. त्यसलाई तिमीहरू फर्काउन सक्दैनौ, यदि तिमीहरू साँचा हौ भने?

فَأَمَّآ إِن كَانَ مِنَ ٱلْمُقَرَّبِينَ ﴿٨٨﴾

८९. ऋत: यदि त्यो व्यक्ति -अल्लाहको) सान्निध्यता प्राप्त व्यक्तिहरूमध्ये एक

भएमा,

९०. (उसका निम्ति) शान्ति र आनन्दमय सुगन्ध तथा वैभवपूर्ण बगैंचा रहेको छ,

فَرَوْحٌ وَّرَيْحَانٌ ۙ وَّجَنَّتُ نَعِيْمٍ ﴿٨٩﴾

९१. तथा यदि त्यो व्यक्ति दायाँहाततर्फका व्यक्तिहरूमध्ये एक भएमा,

وَاَمَّآ اِنْ كَانَ مِنْ اَصْحٰبِ الْيَمِيْنِ ﴿٩٠﴾

९२. तब ता "तिमीमाथि शान्ति अवतीर्ण होस्, ए, दायाँतर्फका व्यक्तिहरूमध्येका (मानिस) !"

فَسَلٰمٌ لَّكَ مِنْ اَصْحٰبِ الْيَمِيْنِ ﴿٩١﴾

९३. परन्तु यदि त्यो व्यक्ति (सत्यका) अस्वीकारीहरू र पथभ्रष्ट व्यक्तिहरूमध्येको रहेमा,

وَاَمَّآ اِنْ كَانَ مِنَ الْمُكَذِّبِيْنَ الضَّاۤلِّيْنَ ﴿٩٢﴾

९४. तब ता (उसका निम्ति) उम्लँदो तातो पानीको आतिथ्य,

فَنُزُلٌ مِّنْ حَمِيْمٍ ﴿٩٣﴾

९५. तथा नर्कमा जल्नु (रहेको छ) ।

وَّتَصْلِيَةُ جَحِيْمٍ ﴿٩٤﴾

९६. वस्तुतः यही नै नितान्त सत्य हो ।

اِنَّ هٰذَا لَهُوَ حَقُّ الْيَقِيْنِ ﴿٩٥﴾

९७. अतः आफ्ना महान प्रतिपालकको नामको गुणगान गर ।

فَسَبِّحْ بِاسْمِ رَبِّكَ الْعَظِيْمِ ﴿٩٦﴾

سُوْرَةُ الْحَدِيْدِ مَدَنِيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ ثَلٰثُوْنَ اٰيَةً وَّاَرْبَعُ رُكُوْعَاتٍ

## अल्-हदीद
(हिजरतपछि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

سَبَّحَ لِلّٰهِ مَا فِي السَّمٰوٰتِ وَالْاَرْضِ ۚ وَهُوَ الْعَزِيْزُ الْحَكِيْمُ ②

२. आकाशमण्डल र पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरू अल्लाहकै गुणगान गर्छन्, तथा उनी सर्वशक्तिमान, तत्वज्ञ छन् ।

لَهٗ مُلْكُ السَّمٰوٰتِ وَالْاَرْضِ ۚ يُحْيٖ وَيُمِيْتُ ۚ وَهُوَ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ③

३. आकाशमण्डल र पृथ्वीको राज्य उनकै रहेको छ, उनी जीवन दान गर्छन्, तथा मृत्यु प्रदान गर्छन्, तथा सम्पूर्ण वस्तुहरूमाथि उनी पूर्ण सामर्थ्यवान रहेका छन् ।

هُوَ الْاَوَّلُ وَالْاٰخِرُ وَالظَّاهِرُ وَالْبَاطِنُ ۚ وَهُوَ بِكُلِّ شَيْءٍ عَلِيْمٌ ④

४. उनी नै प्रथम र अन्तिम तथा प्रकाश्य र गुप्त, रहेका छन्, तथा सम्पूर्ण वस्तुहरूलाई उनी राम्ररी जान्दछन् ।

هُوَ الَّذِيْ خَلَقَ السَّمٰوٰتِ وَالْاَرْضَ فِيْ سِتَّةِ اَيَّامٍ ثُمَّ اسْتَوٰى عَلَى الْعَرْشِ ۚ يَعْلَمُ مَا يَلِجُ فِي الْاَرْضِ وَمَا يَخْرُجُ مِنْهَا وَمَا يَنْزِلُ مِنَ السَّمَآءِ وَمَا يَعْرُجُ فِيْهَا ۚ وَهُوَ مَعَكُمْ اَيْنَ مَا كُنْتُمْ ۚ وَاللّٰهُ بِمَا تَعْمَلُوْنَ بَصِيْرٌ ⑤

५. ती उनी नै हुन्, जसले छ अवधिमा आकाशमण्डल र पृथ्वीलाई सृष्टि गरे, त्यसपछि उनी महासिंहासनमा विराजमान भए । पृथ्वीमा प्रवेश गर्ने र त्यसबाट बाहिर निस्कने प्रत्येक वस्तुलाई उनी जान्दछन्, तथा आकाशबाट अवतीर्ण हुने र त्यसतर्फ चढ्ने वस्तुलाई (पनि) । तथा तिमीहरू जहाँकहीं रहे तापनि उनी तिमीहरूसितै रहेका छन् । तथा तिमीहरूका सम्पूर्ण कार्यहरूलाई अल्लाहले देख्दछन् ।

لَهٗ مُلْكُ السَّمٰوٰتِ وَالْاَرْضِ ۚ وَاِلَى اللّٰهِ تُرْجَعُ الْاُمُوْرُ ⑥

६. आकाशमण्डल र पृथ्वीको राज्य उनकै रहेको छ, तथा सम्पूर्ण मामिलाहरू अल्लाहकै जुनाफमा पेस हुन्छन् ।

يُوْلِجُ الَّيْلَ فِي النَّهَارِ وَ يُوْلِجُ النَّهَارَ فِي الَّيْلِ ۚ وَهُوَ عَلِيْمٌ ۢ بِذَاتِ الصُّدُوْرِ ⑥

६. उनी रात्रिलाई दिनमा दाखिल गर्छन् तथा दिनलाई रात्रिमा दाखिल गर्छन्, तथा छातीभित्र रहेका सम्पूर्ण कुराहरूलाई उनले अति राम्ररी जान्दछन् ।

اٰمِنُوْا بِاللّٰهِ وَ رَسُوْلِهٖ وَ اَنْفِقُوْا مِمَّا جَعَلَكُمْ مُّسْتَخْلَفِيْنَ فِيْهِ ۚ فَالَّذِيْنَ اٰمَنُوْا مِنْكُمْ وَ اَنْفَقُوْا لَهُمْ اَجْرٌ كَبِيْرٌ ⑦

७. अल्लाहप्रति र उनका सन्देशवाहक प्रति विश्वास गर, तथा जुनकुराको उनले तिमीहरूलाई उत्तराधिकारी तुल्याएका छन् त्यसबाट (अल्लाहको मार्गमा) खर्च गर । तथा तिमीहरूमध्ये जसले विश्वास गर्छन् र खर्च गर्छन् तिनीहरूलाई महान प्रतिदान प्राप्त हुनेछ ।

وَمَا لَكُمْ لَا تُؤْمِنُوْنَ بِاللّٰهِ ۚ وَالرَّسُوْلُ يَدْعُوْكُمْ لِتُؤْمِنُوْا بِرَبِّكُمْ وَقَدْ اَخَذَ مِيْثَاقَكُمْ اِنْ كُنْتُمْ مُّؤْمِنِيْنَ ⑧

८. जब सन्देशवाहकले तिमीहरूलाई आफ्ना प्रतिपालक प्रति विश्वास गर्न आह्वान गर्छन्, तथा यदि तिमीहरू साँच्चै नै विश्वासी हौ भने, उनले तिमीहरूसित एउटा दृढ वचन लिइसकेका छन्, अतः तिमीहरूलाई के भएको छ र तिमीहरू अल्लाहप्रति विश्वास गर्दैनौ ?

هُوَ الَّذِيْ يُنَزِّلُ عَلٰى عَبْدِهٖۤ اٰيٰتٍ بَيِّنٰتٍ لِّيُخْرِجَكُمْ مِّنَ الظُّلُمٰتِ اِلَى النُّوْرِ ۚ وَاِنَّ اللّٰهَ بِكُمْ لَرَءُوْفٌ رَّحِيْمٌ ⑨

९. ती उनी नै हुन्, जसले आफ्ना सेवकप्रति स्पष्ट चिह्नहरू अवतीर्ण गर्ने गर्छन्, ताकि उनले तिमीहरूलाई हरेक (थरिका) अन्धकारबाट निकालेर प्रकाशतर्फ लिएर जाउन् । तथा अल्लाह तिमीहरूप्रति वस्तुतः परम दयाशील (र) परम करुणाशील छन् ।

وَمَا لَكُمْ اَلَّا تُنْفِقُوْا فِيْ سَبِيْلِ اللّٰهِ وَلِلّٰهِ مِيْرَاثُ السَّمٰوٰتِ وَالْاَرْضِ ۚ لَا يَسْتَوِيْ مِنْكُمْ مَّنْ اَنْفَقَ مِنْ قَبْلِ الْفَتْحِ وَقٰتَلَ ۚ اُولٰٓئِكَ اَعْظَمُ دَرَجَةً مِّنَ الَّذِيْنَ اَنْفَقُوْا مِنْ بَعْدُ وَقٰتَلُوْا ۚ وَكُلًّا وَّعَدَ اللّٰهُ الْحُسْنٰى ۚ وَاللّٰهُ بِمَا تَعْمَلُوْنَ خَبِيْرٌ ⑩

१०. जब आकाशमण्डल र पृथ्वीको उत्तराधिकार अल्लाह कै रहेका छ । भने, तिमीहरूलाई के भएको छ र तिमीहरू अल्लाहको मार्गमा खर्च गर्दैनौ ? तिमीहरूमध्ये ती व्यक्तिहरू जसले विजयप्राप्ति अघि खर्च गरेका थिए र युद्ध गरेका थिए तिनीहरू (पछि गएर त्यसो गर्ने व्यक्तिहरू) तुल्य रहेका छैनन् । पछिका दिनहरूमा खर्च र युद्ध गरेका

व्यक्तिहरूभन्दा तिनीहरू दर्जामा अधिक उच्च रहेका छन् । तथा अल्लाहले ती सबैको भलाइ गर्ने वचन दिएका छन् । तथा तिमीहरू जुन कार्य गर्छौ, त्यसप्रति अल्लाह पूर्णविदित छन् ।

مَنْ ذَا الَّذِي يُقْرِضُ اللَّهَ قَرْضًا حَسَنًا فَيُضٰعِفَهُ لَهُ وَلَهُ أَجْرٌ كَرِيمٌ ﴿١١﴾

१२. कोही यस्तो व्यक्ति छ जसले अल्लाहलाई एउटा उत्तम ऋण दिनेछ ? ताकि उनले त्यसलाई उसका निम्ति अनेकगुणा बढाउन्, तथा त्यस व्यक्तिलाई एउटा महान प्रतिदान प्राप्त हुनेछ ।

يَوْمَ تَرَى الْمُؤْمِنِينَ وَالْمُؤْمِنٰتِ يَسْعٰى نُورُهُمْ بَيْنَ أَيْدِيهِمْ وَبِأَيْمَانِهِمْ بُشْرٰىكُمُ الْيَوْمَ جَنّٰتٌ تَجْرِي مِنْ تَحْتِهَا الْأَنْهٰرُ خٰلِدِينَ فِيهَا ۚ ذٰلِكَ هُوَ الْفَوْزُ الْعَظِيمُ ﴿١٢﴾

१३. तथा त्यसदिन(का बारेमा सोच) जब तिमीले विश्वासी पुरुषहरू र विश्वासी महिलाहरूलाई, तिनीहरूको ज्योति तिनीहरूका अगाडि र तिनीहरूका दाहिनेतर्फ दगुर्दै गरेको अवस्थामा देख्नेछौ, (तथा तिनीहरूलाई यसो भनिनेछ)– "आज तिमीहरूलाई त्यस्ता बगैंचाहरूको शुभसन्देश दिइन्छ जसमा नहरहरू बग्ने गर्छन्, त्यहाँ तिमीहरू निवास गर्नेछौ । त्यही नै सर्वोत्कृष्ट कृतकार्यता रहेको छ ।

يَوْمَ يَقُولُ الْمُنٰفِقُونَ وَالْمُنٰفِقٰتُ لِلَّذِينَ آمَنُوا انْظُرُونَا نَقْتَبِسْ مِنْ نُورِكُمْ ۚ قِيلَ ارْجِعُوا وَرَاءَكُمْ فَالْتَمِسُوا نُورًا ۚ فَضُرِبَ بَيْنَهُمْ بِسُورٍ لَهُ بَابٌ ۚ بَاطِنُهُ فِيهِ الرَّحْمَةُ وَظٰهِرُهُ مِنْ قِبَلِهِ الْعَذَابُ ﴿١٣﴾

१४. त्यसदिन जब ढोंगी पुरुषहरू र ढोंगी महिलाहरूले विश्वासीजनसित भन्नेछन्, "हाम्रा निम्ति -एक क्षण) पर्ख ताकि तिमीहरूको ज्योतिबाट हामी ज्योति प्राप्त गर्न सकौं", (तब तिनीहरूलाई के) भनिनेछ (भने), "(यदि) तिमीहरू (सक्छौ भने) पछि फर्किएर जाऊ, तथा ज्योति प्राप्त गर्ने चेष्टा गर ।" त्यसपछि तिनीहरूका बीचमा एउटा यस्तो पर्खाल खडा गरिनेछ जसमा एउटा ढोका हुनेछ । त्यसको भित्रीतर्फ (पर्याप्त) करुणा हुनेछ तथा त्यसको बाहिरपट्टि, सामुन्ने दण्ड हुनेछ ।

يُنَادُونَهُمْ أَلَمْ نَكُنْ مَعَكُمْ ۖ قَالُوا بَلٰى وَلٰكِنَّكُمْ فَتَنْتُمْ أَنْفُسَكُمْ وَ

१५. तिनीहरूले उनीहरूलाई (के भन्दै) पुकार्ने छन् (भने), "के हामी तिमीहरूसितै

تَرَبَّصْتُمْ وَارْتَبْتُمْ وَغَرَّتْكُمُ الْاَمَانِيُّ حَتّٰى جَآءَ اَمْرُ اللّٰهِ وَغَرَّكُمْ بِاللّٰهِ الْغَرُوْرُ ﴿١٤﴾

थिएनौं र ?" तिनीहरूले उत्तर दिनेछन्, "हो, परन्तु तिमीहरूले स्वयमलाई मायामोहमा डुबायौ तथा तिमीहरू हिच्किचायौ र सन्देहमा पर्‍यौ तथा तिमीहरूका व्यर्थ अभिलाषाहरूले तिमीहरूलाई तबसम्म धोकामा राखे जब अन्ततः अल्लाहको आदेश आयो । धोकेबाज व्यक्तिले तिमीहरूलाई अल्लाहका सम्बन्धमा धोकामा राखे ।

فَالْيَوْمَ لَا يُؤْخَذُ مِنْكُمْ فِدْيَةٌ وَّلَا مِنَ الَّذِيْنَ كَفَرُوْا ۗ مَاْوٰىكُمُ النَّارُ ۗ هِيَ مَوْلٰىكُمْ ۗ وَبِئْسَ الْمَصِيْرُ ﴿١٥﴾

१६. अतः आज न तिमीहरूबाट न त अविश्वासी व्यक्तिहरूबाट कुनै उद्धारमूल्य ग्रहण गरिनेछ । तिमीहरूको अन्तिम निवासस्थान अग्नि रहेको छ, त्यही नै तिमीहरूको मित्र रहेको छ, तथा त्यो अति नै निकृष्ट गन्तव्यस्थान रहेको छ ।"

اَلَمْ يَاْنِ لِلَّذِيْنَ اٰمَنُوْٓا اَنْ تَخْشَعَ قُلُوْبُهُمْ لِذِكْرِ اللّٰهِ وَمَا نَزَلَ مِنَ الْحَقِّ ۙ وَلَا يَكُوْنُوْا كَالَّذِيْنَ اُوْتُوا الْكِتٰبَ مِنْ قَبْلُ فَطَالَ عَلَيْهِمُ الْاَمَدُ فَقَسَتْ قُلُوْبُهُمْ ۗ وَكَثِيْرٌ مِّنْهُمْ فٰسِقُوْنَ ﴿١٦﴾

१७. के विश्वासीजनका निम्ति अल्लाहको स्मरणले तथा -तिनीहरूतर्फ) अवतीर्ण भएको सत्यको प्रभावले तिनीहरूको हृदय नम्र हुने समय आइपुगेको छैन र ? तथा तिनीहरू ती व्यक्तिहरूसदृश नबनून्, जसलाई तिनीहरूभन्दा पहिला पुस्तक प्रदान गरिएको थियो तथा तिनीहरूका निम्ति त्यो अवधि धेरै लम्ब्याइएको थियो, परन्तु तिनीहरूको हृदय कठोर हुन पुग्यो, तथा तिनीहरूमध्ये धेरै मानिसहरू दुराचारी हुन पुगे ।

اِعْلَمُوْٓا اَنَّ اللّٰهَ يُحْيِ الْاَرْضَ بَعْدَ مَوْتِهَا ۗ قَدْ بَيَّنَّا لَكُمُ الْاٰيٰتِ لَعَلَّكُمْ تَعْقِلُوْنَ ﴿١٧﴾

१८. अल्लाहले पृथ्वीलाई त्यसको मृत्युपश्चात् जीवित गर्छन् भनी जान । तिमीहरूले बुझ्न सक भनी हामीले तिमीहरूसमक्ष चिह्नहरू स्पष्टरूपमा वर्णन गरिदिएका छौं ।

اِنَّ الْمُصَّدِّقِيْنَ وَالْمُصَّدِّقٰتِ وَاَقْرَضُوا اللّٰهَ قَرْضًا حَسَنًا يُّضٰعَفُ لَهُمْ وَلَهُمْ اَجْرٌ كَرِيْمٌ ﴿١٨﴾

१९. ती व्यक्तिहरू(का सम्बन्धमा), जुन व्यक्तिहरू दान दिन्छन्, तथा जुन महिलाहरू दान दिन्छन् र ती व्यक्तिहरू,

जसले अल्लाहलाई उत्तम ऋण दिन्छन्– तिनीहरूका निम्ति त्यसलाई धेरैगुणा बढाइनेछ, तथा तिनहिरूलाई एउटा सम्मानजनक प्रतिदान (समेत) प्रदान गरिनेछ –

وَالَّذِيْنَ اٰمَنُوْا بِاللّٰهِ وَرُسُلِهٖٓ اُولٰٓئِكَ هُمُ الصِّدِّيْقُوْنَ ۖ وَالشُّهَدَآءُ عِنْدَ رَبِّهِمْ ۚ لَهُمْ اَجْرُهُمْ وَ نُوْرُهُمْ ۚ وَ الَّذِيْنَ كَفَرُوْا وَ كَذَّبُوْا بِاٰيٰتِنَآ اُولٰٓئِكَ اَصْحٰبُ الْجَحِيْمِ ﴿١٩﴾

२०. तथा ती व्यक्तिहरू, जसले अल्लाहप्रति र उनका सन्देशवाहकहरूप्रति विश्वास गर्छन् तिनीहरू सत्यवादी र आफ्ना प्रतिपालकका दृष्टिमा साक्षीस्वरूप रहेका छन्, तिनीहरूलाई तिनीहरूको प्रतिदान र तिनीहरूको ज्योति प्राप्त हुनेछ । परन्तु ती व्यक्तिहरू, जसले अविश्वास गर्छन् र हाम्रा चिह्नहरूलाई अस्वीकार गर्छन्, तिनीहरू भने नर्कका निवासी हुन् ।

اِعْلَمُوْٓا اَنَّمَا الْحَيٰوةُ الدُّنْيَا لَعِبٌ وَّلَهْوٌ وَّزِيْنَةٌ وَّ تَفَاخُرٌۢ بَيْنَكُمْ وَ تَكَاثُرٌ فِي الْاَمْوَالِ وَ الْاَوْلَادِ ۚ كَمَثَلِ غَيْثٍ اَعْجَبَ الْكُفَّارَ نَبَاتُهٗ ثُمَّ يَهِيْجُ فَتَرٰىهُ مُصْفَرًّا ثُمَّ يَكُوْنُ حُطَامًا ۚ وَ فِي الْاٰخِرَةِ عَذَابٌ شَدِيْدٌ ۙ وَّ مَغْفِرَةٌ مِّنَ اللّٰهِ وَ رِضْوَانٌ ۚ وَ مَا الْحَيٰوةُ الدُّنْيَآ اِلَّا مَتَاعُ الْغُرُوْرِ ﴿٢٠﴾

२१. यो सासारिक जीवन ता केवल एउटा क्रीडा र मनोरञ्जन तथा सजावट र परस्पर सेखी झाड्ने तथा सम्पत्ति र सन्तान बढाउन परस्पर प्रतिस्पर्धा गर्ने (स्रोतस्वरूप) रहेको छ भनी जान । (यो जीवन) त्यो वर्षासदृश (रहेको छ), जसबाट वनस्पति उत्पन्न हुन्छ, जसले हलोजोत्ने (कृषक)लाई प्रसन्न तुल्याउँछ । त्यसपछि त्यो पाक्छ र त्यसलाई पहेँलो रङ्गमा परिवर्तन भएको तिमीले देख्छौ, त्यसपछि त्यो स-साना -परालका) टुकाहरूमा परिणत हुन पुग्छ । तथा परलोकमा कठोर दण्ड, तथा अल्लाहको क्षमादान र उनको प्रसन्नता (समेत) रहेको छ । तथा यो सांसारिक जीवन केवल (क्षणिक) धोकापूर्ण वस्तुहरूको सुखभोग रहेको छ ।

سَابِقُوْٓا اِلٰى مَغْفِرَةٍ مِّنْ رَّبِّكُمْ وَجَنَّةٍ عَرْضُهَا كَعَرْضِ السَّمَآءِ وَ الْاَرْضِ ۙ اُعِدَّتْ لِلَّذِيْنَ اٰمَنُوْا بِاللّٰهِ وَرُسُلِهٖ ۚ

२२. तिमीहरू आफ्ना प्रतिपालकको क्षमादान र एउटा यस्तो स्वर्ग प्राप्तिका निम्ति परस्पर प्रतिस्पर्धा गर जसको चौडाइ आकाश र पृथ्वीको चौडाइ (विस्तार) बराबर रहेको छ, त्यो अल्लाह र

ذٰلِكَ فَضْلُ اللّٰهِ يُؤْتِيْهِ مَنْ يَّشَآءُ ؕ وَاللّٰهُ ذُو الْفَضْلِ الْعَظِيْمِ ﴿۲۱﴾

उनका सन्देशवाहकप्रति विश्वास गर्ने व्यक्तहरूका निम्ति तयार गरिएको छ । त्यो अल्लाहको कृपा हो, उनले जसलाई चाहन्छन् त्यो प्रदान गर्छन्, तथा अल्लाह अपार कृपाका स्वामी रहेका छन् ।

مَآ اَصَابَ مِنْ مُّصِيْبَةٍ فِى الْاَرْضِ وَلَا فِيْٓ اَنْفُسِكُمْ اِلَّا فِيْ كِتٰبٍ مِّنْ قَبْلِ اَنْ نَّبْرَاَهَا ؕ اِنَّ ذٰلِكَ عَلَى اللّٰهِ يَسِيْرٌ ﴿۲۲﴾

२३. पृथ्वीमाथि अथवा तिमीहरूको (आफ्नो) ज्यानमाथि कुनै यस्तो सङ्कट आइलाग्दैन जसलाई हामीले अस्तित्वमा ल्याउनुअघि नै पुस्तकमा (अभिलेख गरी) राखिएको नहोस् – अल्लाहका निम्ति निश्चय नै त्यो (कार्य) अति सहज रहेको छ –

لِّكَيْلَا تَاْسَوْا عَلٰى مَا فَاتَكُمْ وَلَا تَفْرَحُوْا بِمَآ اٰتٰىكُمْ ؕ وَاللّٰهُ لَا يُحِبُّ كُلَّ مُخْتَالٍ فَخُوْرِ ﴿۲۳﴾

२४. ताकि तिमीहरू आफूले गुमाउनु परेको वस्तुप्रति दुखित नहोऊ, न त उनले तिमीहरूलाई प्रदान गरेको वस्तुप्रति तिमीहरू हर्षमान होऊ । तथा अल्लाहले कुनै आत्मभिमानी, सेखीबाज व्यक्तिलाई मन पराउँदैनन्,

الَّذِيْنَ يَبْخَلُوْنَ وَيَاْمُرُوْنَ النَّاسَ بِالْبُخْلِ ؕ وَمَنْ يَّتَوَلَّ فَاِنَّ اللّٰهَ هُوَ الْغَنِيُّ الْحَمِيْدُ ﴿۲۴﴾

२५. यस्ता व्यक्तिहरू(लाई) जो आफू कृपण रही मानिसहरूलाई (समेत) कृपणताको शिक्षा दिन्छन् । तथा जुन व्यक्तिले आफ्नो पिठयूँ देखाउँछ, त्यस अवस्थामा अल्लाह निश्चय नै, पूर्ण आत्म-निर्भरशील, सम्पूर्ण प्रशंसाका योग्य रहेका छन् ।

لَقَدْ اَرْسَلْنَا رُسُلَنَا بِالْبَيِّنٰتِ وَاَنْزَلْنَا مَعَهُمُ الْكِتٰبَ وَالْمِيْزَانَ لِيَقُوْمَ النَّاسُ بِالْقِسْطِ ۚ وَاَنْزَلْنَا الْحَدِيْدَ فِيْهِ بَاْسٌ شَدِيْدٌ وَّمَنَافِعُ لِلنَّاسِ وَلِيَعْلَمَ اللّٰهُ مَنْ يَّنْصُرُهٗ وَرُسُلَهٗ بِالْغَيْبِ ؕ اِنَّ اللّٰهَ قَوِيٌّ عَزِيْزٌ ﴿۲۵﴾

२६. वस्तुतः हामीले आफ्ना सन्देशवाहक हरूलाई स्पष्ट चिह्नहरूका साथ पठायौं तथा तिनीहरूसितै पुस्तक र तराजु अवतीर्ण गर्‍यौं, ताकि मानिसहरूले न्यायका साथ कार्य गरून्, तथा हामीले लोहा अवतीर्ण गरेका छौं, जसमा घोर लडाइँ(का वस्तुहरू) तथा मानवजातिका निम्ति (धेरै) फाइदाहरू रहेका छन्, तथा ताकि जसले अल्लाह अदृश्य रहेका भए

तापनि उनलाई र उनका सन्देशवाहकलाई सहयोग गर्छन्, तिनीहरूलाई उनले पृथक गर्न सकुन् । निश्चय नै, अल्लाह परम सामर्थ्यवान, परम पराक्रमी रहेका छन् ।

२७. तथा हामीले नूह र इब्राहिमलाई पठाएका थियौं, तथा तिनीहरूका सन्ततिमा नबुव्वत (सिद्धतावाद) तथा पुस्तक(को क्रम) निर्धारण गरिदियौं । अत: तिनीहरूमध्ये केहीले मार्गदर्शनको अनुसरण गरे, परन्तु तिनीहरूमध्ये धेरै मानिसहरू भने विद्रोही बन्न पुगे ।

وَلَقَدْ أَرْسَلْنَا نُوحًا وَّإِبْرٰهِيْمَ وَجَعَلْنَا فِيْ ذُرِّيَّتِهِمَا النُّبُوَّةَ وَالْكِتٰبَ فَمِنْهُمْ مُّهْتَدٍ ۚ وَكَثِيْرٌ مِّنْهُمْ فٰسِقُوْنَ ﴿٢٧﴾

२८. त्यसपछि हामीले आफ्ना सन्देशवाहकहरूलाई तिनीहरूकै अनुसरणकारीस्वरूप पठायौं तथा मरियमपुत्र ईसालाई (पनि तिनीहरूकै) अनुसरणकारीस्वरूप पठायौं, तथा उनलाई हामीले इन्जिल प्रदान गऱ्यौं । तथा उनका अनुयायी बनेका व्यक्तिहरूका हृदयमा हामीले दया र करुणा सिर्जना गऱ्यौं । तथा त्यो ब्रह्मचर्यमार्ग, जुन तिनीहरूले (स्वयम्) आविष्कार गरे– हामीले तिनीहरूका निम्ति त्यो (आदेश) तोकेका थिएनौं । परन्तु अल्लाहको प्रसन्नता प्राप्तिका निम्ति; परन्तु तिनीहरूले त्यसको यथोचित पालना गरेनन् । तथापि हामीले तिनीहरूमध्येका विश्वासी व्यक्तिहरूलाई तिनीहरूको (प्राप्य) प्रतिदान प्रदान गऱ्यौं, परन्तु तिनीहरूमध्ये धेरैजसो व्यक्तिहरू विद्रोही हुन पुगे ।

ثُمَّ قَفَّيْنَا عَلٰٓى اٰثَارِهِمْ بِرُسُلِنَا وَقَفَّيْنَا بِعِيْسَى ابْنِ مَرْيَمَ وَاٰتَيْنٰهُ الْاِنْجِيْلَ ۙ وَجَعَلْنَا فِيْ قُلُوْبِ الَّذِيْنَ اتَّبَعُوْهُ رَاْفَةً وَّرَحْمَةً ۗ وَرَهْبَانِيَّةَ ۨ ابْتَدَعُوْهَا مَا كَتَبْنٰهَا عَلَيْهِمْ اِلَّا ابْتِغَآءَ رِضْوَانِ اللّٰهِ فَمَا رَعَوْهَا حَقَّ رِعَايَتِهَا ۚ فَاٰتَيْنَا الَّذِيْنَ اٰمَنُوْا مِنْهُمْ اَجْرَهُمْ ۚ وَكَثِيْرٌ مِّنْهُمْ فٰسِقُوْنَ ﴿٢٨﴾

२९. हे विश्वासीजन हो ! अल्लाहको डर धारण गर तथा उनका सन्देशवाहकप्रति विश्वास गर, उनले तिमीहरूलाई आफ्नो करुणाको दोहोरो अंश प्रदान गर्नेछन्, तथा तिमीहरूलाई एउटा यस्तो प्रकाश प्रदान गर्नेछन् जसद्वारा तिमीहरू हिँड्नेछौ, तथा

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوا اتَّقُوا اللّٰهَ وَاٰمِنُوْا بِرَسُوْلِهٖ يُؤْتِكُمْ كِفْلَيْنِ مِنْ رَّحْمَتِهٖ وَيَجْعَلْ لَّكُمْ نُوْرًا تَمْشُوْنَ بِهٖ وَيَغْفِرْ لَكُمْ ۗ وَاللّٰهُ غَفُوْرٌ رَّحِيْمٌ ﴿٢٩﴾

तिमीहरूलाई क्षमादान गर्नेछन्– तथा निस्सन्देह अल्लाह परम क्षमाशील, परम करुणाशील छन् –

لِّئَلَّا يَعْلَمَ أَهْلُ الْكِتٰبِ أَلَّا يَقْدِرُوْنَ عَلٰى شَيْءٍ مِّنْ فَضْلِ اللّٰهِ وَأَنَّ الْفَضْلَ بِيَدِ اللّٰهِ يُؤْتِيْهِ مَنْ يَّشَآءُ وَاللّٰهُ ذُو الْفَضْلِ الْعَظِيْمِ ﴿٢٩﴾

३०. ताकि पुस्तकप्राप्त व्यक्तिहरू तिनीहरूलाई (विश्वासीलाई) अल्लाहको कृपाबाट कुनै अंश प्राप्त हुन सक्नेछैन भन्ने नठानून्, वास्तवमा कृपा (पूर्णतः) अल्लाहकै हातमा रहेको छ । उनले जसलाई इच्छा गर्छन् त्यो प्रदान गर्छन् । तथा अल्लाह अपार कृपाका स्वामी रहेका छन् ।

سُورَةُ الْمُجَادَلَةِ مَدَنِيَّةٌ وَهِيَ مَعَ الْبَسْمَلَةِ ثَلٰثٌ وَعِشْرُونَ اٰيَةً وَثَلٰثَةُ رُكُوعَاتٍ

# अल्-मुजादिला:
(हिजरतपछि अवतरित)

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

२. त्यस (महिला)को त्यो कुराकानी, जुन उसले आफ्ना पतिका सम्बन्धमा तिमीसित तर्क गरेकी थिई र अल्लाहका चरणमा फिराद गरेकी थिई, अल्लाहले निश्चयपूर्वक सुनेका छन् । तथा अल्लाहले तिमीहरूको वार्तालाप सुनेका छन् । वस्तुत: अल्लाह सर्वश्रोता, सर्वद्रष्टा छन् ।

قَدْ سَمِعَ اللّٰهُ قَوْلَ الَّتِيْ تُجَادِلُكَ فِيْ زَوْجِهَا وَتَشْتَكِيْٓ اِلَى اللّٰهِ ۖ وَاللّٰهُ يَسْمَعُ تَحَاوُرَكُمَا ۚ اِنَّ اللّٰهَ سَمِيْعٌۢ بَصِيْرٌ ②

३. तिमीहरूमध्ये जसले आफ्ना पत्नीहरूलाई आमा भनी आफुबाट अलग्गै राख्छन्– तिनीहरू उनीहरूका आमा हुनै सक्दैनन्; उनीहरूका आमाहरू त तिनीहरू हुन् जसले उनीहरूलाई जन्माए, तथा उनीहरूले निश्चयरूपमा यस्ता शब्दहरू प्रयोग गरेका छन् जुन स्पष्टतया: अनैतिक तथा असत्य रहेका छन्, परन्तु अल्लाह निश्चय नै पाप मोचनकारी, परम क्षमाशील छन् ।

اَلَّذِيْنَ يُظٰهِرُوْنَ مِنْكُمْ مِّنْ نِّسَآئِهِمْ مَّا هُنَّ اُمَّهٰتِهِمْ ۚ اِنْ اُمَّهٰتُهُمْ اِلَّا الّٰٓـِٔيْ وَلَدْنَهُمْ ۚ وَاِنَّهُمْ لَيَقُوْلُوْنَ مُنْكَرًا مِّنَ الْقَوْلِ وَزُوْرًا ۚ وَاِنَّ اللّٰهَ لَعَفُوٌّ غَفُوْرٌ ③

४. ती यक्तिहरू, जसले आफ्ना पत्नीहरूलाई आमा भनी बोलाउँछन्, र त्यसपछि आफूले बोलेका (शब्द)तर्फ (पुन:) फर्किन्छन्, (त्यसको दण्डस्वरूप) तिनीहरूले परस्पर एक-अर्कालाई स्पर्श गर्नुअघि एउटा दासलाई मुक्त गराउनु पर्नेछ । यही त्यो कुरो हो जसको तिमीहरूलाई उपदेश दिइन्छ तथा अल्लाह तिमीहरूका कियाकलापप्रति पूर्णविदित छन् ।

وَالَّذِيْنَ يُظٰهِرُوْنَ مِنْ نِّسَآئِهِمْ ثُمَّ يَعُوْدُوْنَ لِمَا قَالُوْا فَتَحْرِيْرُ رَقَبَةٍ مِّنْ قَبْلِ اَنْ يَّتَمَآسَّا ۚ ذٰلِكُمْ تُوْعَظُوْنَ بِهٖ ۚ وَاللّٰهُ بِمَا تَعْمَلُوْنَ خَبِيْرٌ ④

५. परन्तु जसलाई (एउटा दास) प्राप्त छैन, त्यसले परस्पर एक-अर्कालाई स्पर्श गर्नुअघि निरन्तर दुई महिना उपवास बस्नु पर्नेछ । तथा जो व्यक्ति त्यसो गर्न असमर्थ रहेको छ, त्यसले साठीजना दरिद्र मानिसहरूलाई भोजन गरा ओस्। तिमीहरूले अल्लाह र उनका सन्देशवाहक प्रति (साँचो) विश्वास स्थापना गर भनी (यसो भनियो) । तथा यी अल्लाह(ले निर्धारित गरे)का सीमाहरू हुन्, तथा अविश्वासीहरूका निम्ति पीडादायक दण्ड रहेको छ ।

فَمَنْ لَّمْ يَجِدْ فَصِيَامُ شَهْرَيْنِ مُتَتَابِعَيْنِ مِنْ قَبْلِ اَنْ يَّتَمَآسَّا ۚ فَمَنْ لَّمْ يَسْتَطِعْ فَاِطْعَامُ سِتِّيْنَ مِسْكِيْنًا ۚ ذٰلِكَ لِتُؤْمِنُوْا بِاللّٰهِ وَرَسُوْلِهٖ ۚ وَتِلْكَ حُدُوْدُ اللّٰهِ ۚ وَلِلْكٰفِرِيْنَ عَذَابٌ اَلِيْمٌ ۝

६. ती व्यक्तिहरू, जसले अल्लाह र उनका सन्देशवाहकको विरोध गर्छन् तिनीहरूलाई त्यसरी नै अपमानित गरिनेछ जसरी तिनीहरूभन्दा पहिलाका व्यक्तिहरूलाई अपमानित गरिएको थियो, तथा हामीले स्पष्ट निर्देशनहरू अवतीर्ण गरिसकेका छौं । तथा अविश्वासीहरूलाई अपमानजनक दण्ड मिल्नेछ ।

اِنَّ الَّذِيْنَ يُحَآدُّوْنَ اللّٰهَ وَرَسُوْلَهٗ كُبِتُوْا كَمَا كُبِتَ الَّذِيْنَ مِنْ قَبْلِهِمْ وَقَدْ اَنْزَلْنَآ اٰيٰتٍۢ بَيِّنٰتٍ ۚ وَلِلْكٰفِرِيْنَ عَذَابٌ مُّهِيْنٌ ۝

७. जुन दिन अल्लाहले तिनीहरू सबैलाई एकत्रित गरी पुनरुत्थान गर्नेछन्, उनले तिनीहरूलाई तिनीहरूले गरेका कार्यहरूबारे अवगत गर्नेछन् । अल्लाहले ती कार्यहरूको हिसाब राखेका छन्, परन्तु तिनीहरूले भने बिर्सिसकेका छन् । तथा सम्पूर्ण कुराहरूका अल्लाह नै साक्षी रहेका छन् ।

يَوْمَ يَبْعَثُهُمُ اللّٰهُ جَمِيْعًا فَيُنَبِّئُهُمْ بِمَا عَمِلُوْا ۚ اَحْصٰىهُ اللّٰهُ وَنَسُوْهُ ۚ وَاللّٰهُ عَلٰى كُلِّ شَيْءٍ شَهِيْدٌ ۝ ع

८. आकाशमण्डल र पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरूलाई अल्लाहले जान्दछन् भन्ने कुरो तिमीलाई थाहा छैन र? कुनै स्थानमा तीनजना व्यक्तिहरूबीच कुनै यस्तो गुप्त मन्त्रणा हुँदैन जहाँ चौथास्वरूप उनी उपस्थित रहेका नहुन्, न त कहीं पाँचजना रहेको स्थानमा उनी

اَلَمْ تَرَ اَنَّ اللّٰهَ يَعْلَمُ مَا فِى السَّمٰوٰتِ وَمَا فِى الْاَرْضِ ۚ مَا يَكُوْنُ مِنْ نَّجْوٰى ثَلٰثَةٍ اِلَّا هُوَ رَابِعُهُمْ وَلَا خَمْسَةٍ اِلَّا هُوَ سَادِسُهُمْ وَلَآ اَدْنٰى مِنْ ذٰلِكَ وَلَآ اَكْثَرَ اِلَّا هُوَ مَعَهُمْ اَيْنَ مَا كَانُوْا ۚ ثُمَّ يُنَبِّئُهُمْ بِمَا عَمِلُوْا يَوْمَ الْقِيٰمَةِ ۚ اِنَّ اللّٰهَ بِكُلِّ شَيْءٍ عَلِيْمٌ ۝

छैटौँस्वरूप रहेका नहुन्, चाहे त्यो भन्दा कम अथवा त्यो भन्दा अधिक, परन्तु उनी तिनीहरूसितै रहन्छन्, तिनीहरू जहाँकहीँ रहुन् । अत: पुनरुत्थानका दिन उनले तिनीहरूलाई तिनीहरूले गरेका कार्यहरूबारे अवगत गर्नेछन् । निश्चयपूर्वक, सम्पूर्ण वस्तुहरूलाई अल्लाहले अति राम्ररी जान्दछन् ।

أَلَمْ تَرَ إِلَى الَّذِينَ نُهُوا عَنِ النَّجْوَىٰ ثُمَّ يَعُودُونَ لِمَا نُهُوا عَنْهُ وَيَتَنَاجَوْنَ بِالْإِثْمِ وَالْعُدْوَانِ وَمَعْصِيَتِ الرَّسُولِ ز وَإِذَا جَاءُوكَ حَيَّوْكَ بِمَا لَمْ يُحَيِّكَ بِهِ اللَّهُ ۙ وَيَقُولُونَ فِي أَنفُسِهِمْ لَوْلَا يُعَذِّبُنَا اللَّهُ بِمَا نَقُولُ ۚ حَسْبُهُمْ جَهَنَّمُ ۚ يَصْلَوْنَهَا ۚ فَبِئْسَ الْمَصِيرُ ﴿٩﴾

९. के तिमीले ती व्यक्तिहरूलाई देखेका छैनौ, जसलाई गुप्त मन्त्रणा (गर्न) मनाही गरिएको थियो? तथा तिनीहरू बारम्बार मनाही गरिएको कुरोतर्फ फर्कन्छन् र गुप्तरूपमा पाप र सिमोल्लङ्घन तथा सन्देशवाहकको अवज्ञा गर्ने सम्बन्धमा मन्त्रणा गर्छन् । तथा जब तिनीहरू तिमीसमक्ष आउँछन् तिमीलाई (त्यस अभिवादनबाट) अभिनन्दन गर्छन् जसबाट अल्लाहले तिमीलाई अभिनन्दन गरेका छैनन्, परन्तु तिनीहरू परस्पर (के) भन्छन् (भने), "हामीले भनेको कुराप्रति अल्लाह हामीलाई किन दण्ड दिँदैनन् त?" तिनीहरूका निम्ति नर्क नै पर्याप्त रहेको छ, जहाँ तिनीहरू जल्नेछन्, तथा त्यो अत्यन्त निकृष्ट गन्तव्यस्थान रहेको छ

يَا أَيُّهَا الَّذِينَ آمَنُوا إِذَا تَنَاجَيْتُمْ فَلَا تَتَنَاجَوْا بِالْإِثْمِ وَالْعُدْوَانِ وَمَعْصِيَتِ الرَّسُولِ وَتَنَاجَوْا بِالْبِرِّ وَالتَّقْوَىٰ ۖ وَاتَّقُوا اللَّهَ الَّذِي إِلَيْهِ تُحْشَرُونَ ﴿١٠﴾

१०. हे विश्वासीजन हो ! जब तिमीहरू परस्पर गुप्त रूपमा वार्तालाप गर्छौ, पाप (गर्ने) र सिमोल्लङ्घन (गर्ने) तथा सन्देशवाहकको अवज्ञा (गर्ने) बारेमा सल्लाह नगर, अपितु पुण्य र धर्मनिष्ठता (प्राप्त गर्ने) सम्बन्धमा सल्लाह गर, तथा अल्लाहसित डराऊ जसतर्फ तिमीहरू (सबै)लाई एकत्रित गरी लगिनेछ ।

إِنَّمَا النَّجْوَىٰ مِنَ الشَّيْطَانِ لِيَحْزُنَ الَّذِينَ آمَنُوا وَلَيْسَ بِضَارِّهِمْ شَيْئًا إِلَّا بِإِذْنِ اللَّهِ ۚ وَعَلَى اللَّهِ فَلْيَتَوَكَّلِ الْمُؤْمِنُونَ ﴿١١﴾

११. (पाप कार्यका लागि) गुप्त मन्त्रणा (गर्नु) सैतानको कार्य हो, ताकि उसले विश्वासीजनलाई चिन्ताग्रस्त तुल्याओस्,

परन्तु अल्लाहको अनुमतिबिना त्यसले उनीहरूको कुनै हानि गर्न सक्दैन । तथा अल्लाहप्रति नै विश्वासीहरूले आफ्नो भरोसा राखून् ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوٓا۟ إِذَا قِيلَ لَكُمْ تَفَسَّحُوا۟ فِى ٱلْمَجَٰلِسِ فَٱفْسَحُوا۟ يَفْسَحِ ٱللَّهُ لَكُمْ ۖ وَإِذَا قِيلَ ٱنشُزُوا۟ فَٱنشُزُوا۟ يَرْفَعِ ٱللَّهُ ٱلَّذِينَ ءَامَنُوا۟ مِنكُمْ وَٱلَّذِينَ أُوتُوا۟ ٱلْعِلْمَ دَرَجَٰتٍ ۚ وَٱللَّهُ بِمَا تَعْمَلُونَ خَبِيرٌ ﴿١١﴾

१२. हे विश्वासीजन हो ! जब तिमीहरूलाई सभाहरूमा "(अन्य व्यक्तिहरुका निम्ति स्थान छाडेर) बस्ने गर" भनी भनिन्छ, तब फराक भएर बस्ने गर, अल्लाहले तिमीहरूका निम्ति स्थान विस्तृत तुल्याउनेछन् । तथा जब तिमीहरूलाई "खडा होऊ" भनी आदेश दिइन्छ, तब खडा हुने गर, अल्लाहले तिमीहरूमध्ये विश्वासी र बुद्धिमान व्यक्तिहरूको पदोन्नति (दर्जाको कमानुसार) प्रदान गर्नेछन् । तथा तिमीहरूका कियाकलापहरूप्रति अल्लाह पूर्णविदित रहेका छन् ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوٓا۟ إِذَا نَٰجَيْتُمُ ٱلرَّسُولَ فَقَدِّمُوا۟ بَيْنَ يَدَىْ نَجْوَىٰكُمْ صَدَقَةً ۚ ذَٰلِكَ خَيْرٌ لَّكُمْ وَأَطْهَرُ ۚ فَإِن لَّمْ تَجِدُوا۟ فَإِنَّ ٱللَّهَ غَفُورٌ رَّحِيمٌ ﴿١٢﴾

१३. हे विश्वासीजन हो ! जब तिमीहरू व्यक्तिगत रूपमा सन्देशवाहकसित वार्ता गर्न चाहन्छौ, वार्ता गर्नुअघि भेट टक्र्याउने गर । त्यो कार्य तिमीहरूका निम्ति अधिक उत्तम र अधिक पवित्रता (प्राप्तिको साधन) हुनेछ । परन्तु यदि तिमीहरू (केही दिने कुरामा) असमर्थ भएमा, अल्लाह परम क्षमाशील, परम दानशील रहेका छन् ।

ءَأَشْفَقْتُمْ أَن تُقَدِّمُوا۟ بَيْنَ يَدَىْ نَجْوَىٰكُمْ صَدَقَٰتٍ ۚ فَإِذْ لَمْ تَفْعَلُوا۟ وَتَابَ ٱللَّهُ عَلَيْكُمْ فَأَقِيمُوا۟ ٱلصَّلَوٰةَ وَءَاتُوا۟ ٱلزَّكَوٰةَ وَأَطِيعُوا۟ ٱللَّهَ وَرَسُولَهُۥ ۚ وَٱللَّهُ خَبِيرٌۢ بِمَا تَعْمَلُونَ ﴿١٣﴾

१४. के तिमीहरू आफ्नो वार्ता (सर-सल्लाह) प्रारम्भ हुनुअघि भेट टक्र्याउनबाट डराउँछौ? परन्तु यदि तिमीहरूले त्यसो गरेनौ तथा अल्लाहले तिमीहरूमाथि करुणा गरे भने, तिमीहरू नमाज अनुष्ठान गर र जगात देऊ तथा अल्लाह र उनका सन्देशवाहकका आज्ञाकारी बन (त्यही नै पर्याप्त हुनेछ) । तथा तिमीहरूका कियाकलापहरूप्रति

अल्लाह पूर्णविदित रहेका छन् ।

أَلَمْ تَرَ إِلَى الَّذِينَ تَوَلَّوْا قَوْمًا غَضِبَ اللَّهُ عَلَيْهِمْ مَا هُمْ مِنْكُمْ وَلَا مِنْهُمْ وَيَحْلِفُونَ عَلَى الْكَذِبِ وَهُمْ يَعْلَمُونَ ﴿١٥﴾

१५. के तिमीले ती व्यक्तिहरूलाई देखेका छैनौ जसले यस्ता मानिसहरूसित मित्रता गरेका छन् जसमाथि अल्लाहको अभिशाप परेको छ? ती व्यक्तिहरू न तिमीहरूमध्येका रहेका छन् न त तिनीहरूमध्येकै, तथा तिनीहरू जानी बुझीकन मिथ्याकुराहरूप्रति शपथ खान्छन्

أَعَدَّ اللَّهُ لَهُمْ عَذَابًا شَدِيدًا إِنَّهُمْ سَاءَ مَا كَانُوا يَعْمَلُونَ ﴿١٦﴾

१६. अल्लाहले तिनीहरूका निम्ति कठोर दण्ड तयार गरेर राखेका छन् । तिनीहरूले गर्ने गरेका कार्यहरू निस्सन्देह अति नराम्रा रहेका छन् ।

اتَّخَذُوا أَيْمَانَهُمْ جُنَّةً فَصَدُّوا عَنْ سَبِيلِ اللَّهِ فَلَهُمْ عَذَابٌ مُهِينٌ ﴿١٧﴾

१७. तिनीहरूले आफ्ना शपथलाई (आफ्ना खराब कार्यका निम्ति) ढालस्वरूप बनाएका छन्, तथा तिनीहरू मानिसलाई अल्लाहको मार्गबाट विमुख तुल्याउँछन्, अतः तिनीहरूलाई अपमानजनक दण्ड मिल्नेछ ।

لَنْ تُغْنِيَ عَنْهُمْ أَمْوَالُهُمْ وَلَا أَوْلَادُهُمْ مِنَ اللَّهِ شَيْئًا أُولَئِكَ أَصْحَابُ النَّارِ هُمْ فِيهَا خَالِدُونَ ﴿١٨﴾

१८. तिनीहरूलाई न तिनीहरूको धन-सम्पत्तिले न त तिनीहरूका सन्तानले नै अल्लाहविरुद्ध केही लाभ पुऱ्याउने छन् । तिनीहरू अग्निका बासिन्दाहरू हुन्, जहाँ तिनीहरू सदा निवास गर्नेछन् ।

يَوْمَ يَبْعَثُهُمُ اللَّهُ جَمِيعًا فَيَحْلِفُونَ لَهُ كَمَا يَحْلِفُونَ لَكُمْ وَيَحْسَبُونَ أَنَّهُمْ عَلَى شَيْءٍ أَلَا إِنَّهُمْ هُمُ الْكَاذِبُونَ ﴿١٩﴾

१९. जुन दिन अल्लाहले तिनीहरूलाई एकत्रित गरी उत्थान गर्नेछन्, तिनीहरूले उनीसमक्ष तिमीहरूसमक्ष शपथ खाएझैं गरी शपथ खानेछन्, तथा तिनीहरू कुनै (युक्तिसङ्गत) कुरामा कायम छन् भन्ने धारणा तिनीहरूले लिनेछन् । सुन, तिनीहरू नै वास्तवमा मिथ्यावादी व्यक्तिहरू हुन् ।

اسْتَحْوَذَ عَلَيْهِمُ الشَّيْطَانُ فَأَنْسَاهُمْ

२०. सैतानले तिनीहरूमाथि आफ्नो प्रतिपालकत्व जमाएको छ, तथा

ذِكْرَ اللّٰهِ ۚ اُولٰٓئِكَ حِزْبُ الشَّيْطٰنِ ۚ اَلَآ اِنَّ حِزْبَ الشَّيْطٰنِ هُمُ الْخٰسِرُوْنَ ⑲

अल्लाहको स्मरण गर्नबाट तिनीहरूलाई भुलाएको छ । तिनीहरू सैतान पक्षका रहेका छन् । सुन, सैतानका दलहरू नै अन्तत: निश्चयपूर्वक घाटाग्रस्त हुन पुग्नेछन् ।

اِنَّ الَّذِيْنَ يُحَآدُّوْنَ اللّٰهَ وَ رَسُوْلَهٗٓ اُولٰٓئِكَ فِى الْاَذَلِّيْنَ ⑳

२१. अवश्य नै, ती व्यक्तिहरू, जसले अल्लाह र उनका सन्देशवाहकको विरोध गर्छन् तिनीहरू निकृष्ट व्यक्तिहरूमध्ये हुन पुग्नेछन् ।

كَتَبَ اللّٰهُ لَاَغْلِبَنَّ اَنَا وَ رُسُلِيْ ۚ اِنَّ اللّٰهَ قَوِيٌّ عَزِيْزٌ ㉑

२२. "निश्चयपूर्वक म र मेरा सन्देशवाहक विजयी भएरै छाडनेछौं" भनी अल्लाहले निर्णय गरिसकेका छन् । वस्तुत: अल्लाह परम शक्तिशाली, परम पराक्रमी रहेका छन् ।

لَا تَجِدُ قَوْمًا يُّؤْمِنُوْنَ بِاللّٰهِ وَالْيَوْمِ الْاٰخِرِ يُوَآدُّوْنَ مَنْ حَآدَّ اللّٰهَ وَ رَسُوْلَهٗ وَلَوْ كَانُوْٓا اٰبَآءَهُمْ اَوْ اَبْنَآءَهُمْ اَوْ اِخْوَانَهُمْ اَوْ عَشِيْرَتَهُمْ ۚ اُولٰٓئِكَ كَتَبَ فِيْ قُلُوْبِهِمُ الْاِيْمَانَ وَ اَيَّدَهُمْ بِرُوْحٍ مِّنْهُ ۚ وَ يُدْخِلُهُمْ جَنّٰتٍ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ خٰلِدِيْنَ فِيْهَا ۚ رَضِيَ اللّٰهُ عَنْهُمْ وَرَضُوْا عَنْهُ ۚ اُولٰٓئِكَ حِزْبُ اللّٰهِ ۚ اَلَآ اِنَّ حِزْبَ اللّٰهِ هُمُ الْمُفْلِحُوْنَ ㉒

२३. अल्लाहप्रति र अन्तिम दिनप्रति विश्वास गर्ने कुनै यस्तो जाति तिमीले पाउनेछैनौ जसले अल्लाह र उनका सन्देशवाहकका विरोधीहरूसित प्रेम गरून्, चाहे तिनीहरू उनीहरूका पिताहरू अथवा उनीहरूका पुत्रहरू अथवा भाइहरू अथवा उनीहरूका निकट सम्बन्धीहरू नै किन नहुन् । यिनीहरू नै ती व्यक्तिहरू हुन्, जसका हृदयमा अल्लाहले (साँचो) विश्वास लेखिदिएका छन् तथा उनले आफ्नो आत्मा -वाणी) द्वारा तिनीहरूलाई सुदृढ तुल्याएका छन् । तथा उनले तिनीहरूलाई ती बगैंचाहरूमा दाखिल गर्नेछन् जसमनि नहरहरू बग्ने गर्छन् । त्यहाँ तिनीहरू सदा निवास गर्नेछन् । अल्लाह तिनीहरूसित प्रसन्न भएका छन्, र तिनीहरू उनीसित प्रसन्न भएका छन् । तिनीहरू अल्लाहका दल रहेका छन् । (हे मानिसहरू हो) सुन ! अल्लाहको दल नै कृतार्थ हुनेछ ।




## अल्-हश्र
(हिजरतपछि अवतरित)

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ۝١

२. आकाशमण्डल र पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरूले अल्लाहकै गुणगान गरिरहेछन्, तथा उनी सर्वविजयी, परम तत्वज्ञ रहेका छन् ।

سَبَّحَ لِلّٰهِ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْاَرْضِ ۚ وَهُوَ الْعَزِيْزُ الْحَكِيْمُ ۝١

३. ती उनी नै हुन्, जसले पुस्तकप्राप्त मानिसहरूमध्येका अविश्वासी व्यक्तिहरू लाई प्रथम निर्वासनको समयमा तिनीहरूका घरबाट निकालेका थिए । तिनीहरू निस्कनेछन् भनेर तिमीहरूले ठानेका थिएनौ, तथा तिनीहरूका किल्लाहरूले तिनीहरूलाई अल्लाहविरुद्ध सुरक्षा प्रदान गर्नेछन् भनी तिनीहरू ठान्दथे । परन्तु अल्लाह तिनीहरूसमक्ष त्यस दिशाबाट आए जसबारे तिनीहरूले सोचेका थिएनन्, तथा उनले तिनीहरूका हृदयमा आतङ्क सिर्जना गरे, फलस्वरूप तिनीहरूले आफ्ना हातले र विश्वासीजनका हातले आफ्नो घरबार ध्वस्त पारे । अतः हे नेत्रवान व्यक्तिहरू हो ! शिक्षा लेऊ ।

هُوَ الَّذِيْٓ اَخْرَجَ الَّذِيْنَ كَفَرُوْا مِنْ اَهْلِ الْكِتٰبِ مِنْ دِيَارِهِمْ لِاَوَّلِ الْحَشْرِ ؕ مَا ظَنَنْتُمْ اَنْ يَّخْرُجُوْا وَظَنُّوْٓا اَنَّهُمْ مَّانِعَتُهُمْ حُصُوْنُهُمْ مِّنَ اللّٰهِ فَاَتٰىهُمُ اللّٰهُ مِنْ حَيْثُ لَمْ يَحْتَسِبُوْا ۗ وَقَذَفَ فِيْ قُلُوْبِهِمُ الرُّعْبَ يُخْرِبُوْنَ بُيُوْتَهُمْ بِاَيْدِيْهِمْ وَاَيْدِي الْمُؤْمِنِيْنَ ۗ فَاعْتَبِرُوْا يٰٓاُولِي الْاَبْصَارِ ۝٢

४. तथा यदि अल्लाहले तिनीहरूका निम्ति निर्वासनको आदेश जारी गरिनसकेका भए यसै संसारमा तिनीहरूलाई निश्चय नै दण्ड दिने थिए । तथा परलोकमा तिनीहरूलाई निश्चयपूर्वक अग्निको दण्ड मिल्नेछ ।

وَلَوْلَآ اَنْ كَتَبَ اللّٰهُ عَلَيْهِمُ الْجَلَآءَ لَعَذَّبَهُمْ فِي الدُّنْيَا ۚ وَلَهُمْ فِي الْاٰخِرَةِ عَذَابُ النَّارِ ۝٣

५. त्यसको कारण के हो भने, तिनीहरूले अल्लाह र उनका सन्देशवाहकको विरोध गरे, तथा जसले

ذٰلِكَ بِاَنَّهُمْ شَآقُّوا اللّٰهَ وَرَسُوْلَهٗ ۚ وَمَنْ يُّشَآقِّ اللّٰهَ فَاِنَّ اللّٰهَ شَدِيْدُ الْعِقَابِ ۝٤

अल्लाहको विरोध गर्छ (तब अल्लाह निश्चय नै दण्ड दिनमा कठोर रहेका छन् ।

مَا قَطَعْتُمْ مِّنْ لِّيْنَةٍ اَوْ تَرَكْتُمُوْهَا قَآئِمَةً عَلٰٓى اُصُوْلِهَا فَبِاِذْنِ اللّٰهِ وَلِيُخْزِيَ الْفٰسِقِيْنَ ۝٥

६. जुन खजूरका वृक्षहरू तिमीहरूले काटेर ढाल्यौ अथवा आफ्नै मूलमा खडा रहन दियौ त्यो सबै कार्य अल्लाहकै आदेशद्वारा भएको थियो, ताकि उनले सीमोल्लङ्घनकारीहरूलाई अपमानित गरून्

وَمَآ اَفَآءَ اللّٰهُ عَلٰى رَسُوْلِهٖ مِنْهُمْ فَمَآ اَوْجَفْتُمْ عَلَيْهِ مِنْ خَيْلٍ وَّلَا رِكَابٍ وَّلٰكِنَّ اللّٰهَ يُسَلِّطُ رُسُلَهٗ عَلٰى مَنْ يَّشَآءُ ۚ وَاللّٰهُ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ۝٦

७. तथा युद्धमा प्राप्त सम्पत्तिस्वरूप जुन तिनीहरूको (धन) अल्लाहले आफ्ना सन्देशवाहकलाई प्रदान गरे, त्यसका निम्ति न तिमीहरूले घोडा न त उँट नै दौडाएका थियौ, परन्तु अल्लाहले जसमाथि चाहन्छन् त्यसमाथि आफ्ना सन्देशवाहकलाई अधिकार (शक्ति) प्रदान गर्छन्, तथा सम्पूर्ण वस्तुहरूमाथि अल्लाह पूर्ण सामर्थ्यवान रहेका छन् ।

مَآ اَفَآءَ اللّٰهُ عَلٰى رَسُوْلِهٖ مِنْ اَهْلِ الْقُرٰى فَلِلّٰهِ وَلِلرَّسُوْلِ وَلِذِى الْقُرْبٰى وَالْيَتٰمٰى وَالْمَسٰكِيْنِ وَابْنِ السَّبِيْلِ ۙ كَيْ لَا يَكُوْنَ دُوْلَةًۢ بَيْنَ الْاَغْنِيَآءِ مِنْكُمْ ۗ وَمَآ اٰتٰىكُمُ الرَّسُوْلُ فَخُذُوْهُ ۚ وَمَا نَهٰىكُمْ عَنْهُ فَانْتَهُوْا ۚ وَاتَّقُوا اللّٰهَ ۗ اِنَّ اللّٰهَ شَدِيْدُ الْعِقَابِ ۝٧

८. नगरका मानिसहरूको जे जति (सम्पत्ति) अल्लाहले युद्धमा प्राप्त धनस्वरूप आफ्ना सन्देशवाहकलाई प्रदान गरेका छन् त्यो अल्लाह र सन्देशवाहक तथा नातेदार र अभावग्रस्त र पथिकहरूका निम्ति रहेको छ, ताकि त्यो तिमीहरूमध्ये (केवल) धनी व्यक्तिहरूका बीचमा मात्र घुमिनरहोस् । तथा सन्देशवाहकले जे जति प्रदान गर्छन् त्यसलाई ग्रहण गर, तथा जुन कुराबाट उनले तिमीहरूलाई रोक्छन् त्यसबाट विरत रहने गर । तथा अल्लाहसित डराऊ, निश्चय नै, अल्लाह दण्ड दिनमा अति कठोर छन् ।

لِلْفُقَرَآءِ الْمُهٰجِرِيْنَ الَّذِيْنَ اُخْرِجُوْا مِنْ دِيَارِهِمْ وَاَمْوَالِهِمْ يَبْتَغُوْنَ فَضْلًا مِّنَ اللّٰهِ وَرِضْوَانًا وَّيَنْصُرُوْنَ اللّٰهَ وَرَسُوْلَهٗ ۗ اُولٰٓئِكَ هُمُ الصّٰدِقُوْنَ ۝٨

९. (त्यो सम्पत्ति) ती निर्धन आप्रवासीहरूका निम्ति रहेको छ जसलाई तिनीहरूको घरबार र सम्पत्तिबाट बेदखल गरी निकालिएको छ, किनभने तिनीहरू अल्लाहको कृपादृष्टि र (उनको) प्रसन्नता

प्राप्त गर्ने चेष्टा गर्छन्, तथा अल्लाह र उनका सन्देशवाहकलाई सहयोग गर्ने गर्छन् । यिनीहरू नै (वस्तुतः आफ्नो विश्वासमा) साँच्चा रहेका छन् ।

وَالَّذِيْنَ تَبَوَّؤُ الدَّارَ وَالْاِيْمَانَ مِنْ قَبْلِهِمْ يُحِبُّوْنَ مَنْ هَاجَرَ اِلَيْهِمْ وَلَا يَجِدُوْنَ فِيْ صُدُوْرِهِمْ حَاجَةً مِّمَّآ اُوْتُوْا وَيُؤْثِرُوْنَ عَلٰٓى اَنْفُسِهِمْ وَلَوْ كَانَ بِهِمْ خَصَاصَةٌ ۗ وَمَنْ يُّوْقَ شُحَّ نَفْسِهٖ فَاُولٰٓئِكَ هُمُ الْمُفْلِحُوْنَ ﴿١٠﴾

१०. तथा ती व्यक्तिहरू, जसले तिनीहरूभन्दा पहिला नै (त्यस नगरमा आफ्नो) घर स्थापित (निर्माण) गरेका थिए र आस्था (ग्रहण गरेका थिए), आप्रवासी भएर तिनीहरूसमक्ष आएका व्यक्तिहरूसित तिनीहरू प्रेम गर्छन्, तथा तिनीहरूलाई (शरणार्थीहरूलाई) दिइएको सम्पत्तिप्रति आफ्नो मनमा कुनै चाहना राख्दैनन्, परन्तु तिनीहरू अन्य व्यक्तिहरूलाई आफ्नो ज्यानभन्दा अधिक प्राथमिकता दिन्छन्, यद्यपि गरिबी नै तिनीहरूको नियति किन नहोस् । तथा जसलाई उसको आफ्नो मनको कृपणताबाट मुक्त गरिएको छ, ती व्यक्तिहरू नै कृतार्थ हुनेछन् ।

وَالَّذِيْنَ جَآءُوْ مِنْۢ بَعْدِهِمْ يَقُوْلُوْنَ رَبَّنَا اغْفِرْ لَنَا وَلِاِخْوَانِنَا الَّذِيْنَ سَبَقُوْنَا بِالْاِيْمَانِ وَلَا تَجْعَلْ فِيْ قُلُوْبِنَا غِلًّا لِّلَّذِيْنَ اٰمَنُوْا رَبَّنَآ اِنَّكَ رَءُوْفٌ رَّحِيْمٌ ﴿١١﴾

११. तथा (त्यो युद्धमा प्राप्त सम्पत्ति) तिनीहरूभन्दा पछि आएका व्यक्तिहरू(का लागि पनि हो) । तिनीहरू भन्छन्, "हे हाम्रा प्रतिपालक, हामीलाई र हाम्रा ती भाइहरूलाई, जसले हामीभन्दा पहिला विश्वास (स्थापना) गरेका थिए, क्षमा प्रदान गर, तथा विश्वासीजनहरूविरुद्ध हाम्रा हृदयमा कुनै द्वेषभाव रहन नदेऊ । हे हाम्रा प्रतिपालक ! तिमी निस्सन्देह परम दयाशील, परम करुणाशील छौ ।'

اَلَمْ تَرَ اِلَى الَّذِيْنَ نَافَقُوْا يَقُوْلُوْنَ لِاِخْوَانِهِمُ الَّذِيْنَ كَفَرُوْا مِنْ اَهْلِ الْكِتٰبِ لَئِنْ اُخْرِجْتُمْ لَنَخْرُجَنَّ مَعَكُمْ وَلَا نُطِيْعُ فِيْكُمْ اَحَدًا

१२. के तिमीले ती ढोंगी व्यक्तिहरूलाई देखेका छैनौ? तिनीहरू ती पुस्तकप्राप्त व्यक्तिहरूमध्ये आफ्ना अविश्वासी भाइहरूलाई भन्छन्, "यदि तिमीहरूलाई निष्कासित गरिएमा, हामी तिनीहरूसितै निस्केर जानेछौं, तथा तिमीहरूविरुद्ध हामी कदापि कसैको कुरा मान्नेछैनौं : तथा यदि

أَبَدًا وَإِن قُوتِلْتُمْ لَنَنصُرَنَّكُمْ وَاللَّهُ يَشْهَدُ إِنَّهُمْ لَكَاذِبُونَ ﴿١٢﴾

तिमीहरूविरुद्ध लडाइ गरिएमा हामी अवश्य तिमीहरूलाई सहयोग गर्नेछौं ।" परन्तु तिनीहरू निश्चयपूर्वक मिथ्यावादी रहेका छन् भनी अल्लाह साक्षी दिन्छन् ।

لَئِنْ أُخْرِجُوا لَا يَخْرُجُونَ مَعَهُمْ وَلَئِن قُوتِلُوا لَا يَنصُرُونَهُمْ وَلَئِن نَّصَرُوهُمْ لَيُوَلُّنَّ الْأَدْبَارَ ثُمَّ لَا يُنصَرُونَ ﴿١٣﴾

१३. यदि तिनीहरूलाई निष्कासित गरिएमा, उनीहरू कदापि तिनीहरूसित निस्केर जाने छैनन्; तथा यदि तिनीहरूविरुद्ध लडाइ गरिएमा उनीहरूले कदापि तिनीहरूलाई सहयोग गर्नेछैनन् । तथा कदाचित सहयोग गरिहाले भने पनि, उनीहरू निस्सन्देह (आफ्नो) पिठ्यूँ देखाएर भाग्नेछन् तथा त्यस अवस्थामा तिनीहरूलाई कुनै सहयोग प्राप्त हुनेछैन ।

لَأَنتُمْ أَشَدُّ رَهْبَةً فِي صُدُورِهِم مِّنَ اللَّهِ ذَٰلِكَ بِأَنَّهُمْ قَوْمٌ لَّا يَفْقَهُونَ ﴿١٤﴾

१४. एउटा सत्य के छ भने, तिनीहरूका मनमा अल्लाहकोभन्दा तिमीहरूको बढी अधिक डर बसेको छ । यसको कारण के हो भने, तिनीहरू त्यस्ता व्यक्तिहरू रहेका छन् जसले पटक्कै कुरा बुझ्दैनन् ।

لَا يُقَاتِلُونَكُمْ جَمِيعًا إِلَّا فِي قُرًى مُّحَصَّنَةٍ أَوْ مِن وَرَاءِ جُدُرٍ بَأْسُهُم بَيْنَهُمْ شَدِيدٌ تَحْسَبُهُمْ جَمِيعًا وَقُلُوبُهُمْ شَتَّىٰ ذَٰلِكَ بِأَنَّهُمْ قَوْمٌ لَّا يَعْقِلُونَ ﴿١٥﴾

१५. किल्लाबन्द नगरभित्र रही अथवा कुनै पर्खालपछि रही युद्ध गर्नुबाहेक एकजुट भएर तिमीहरूविरुद्ध तिनीहरूले युद्ध गर्नेछैनन् । तिनीहरूको पारस्परिक लडाइ कठो रहने गर्छ । तिनीहरू एकजुट रहेका छन् भन्ने तिमी ठान्छौ, परन्तु तिनीहरू आन्तरिकरूपमा विभाजित रहेका छन् । यसको कारण के हो भने, तिनीहरू विवेकहीन मानिसहरू हुन् ।

كَمَثَلِ الَّذِينَ مِن قَبْلِهِمْ قَرِيبًا ذَاقُوا وَبَالَ أَمْرِهِمْ وَلَهُمْ عَذَابٌ أَلِيمٌ ﴿١٦﴾

१६. (तिनीहरूको अवस्था) तिनीहरूभन्दा केही समयअघि गुज्रेका ती मानिसहरूको ( अवस्था) सदृश रहेको छ, जसले आफ्नो कमाइको निकृष्ट परिणाम चाखे । तथा तिनीहरूका निम्ति एउटा पीडादायक दण्ड रहेको छ ।

كَمَثَلِ الشَّيْطٰنِ اِذْ قَالَ لِلْاِنْسَانِ اكْفُرْ ۚ فَلَمَّا كَفَرَ قَالَ اِنِّيْ بَرِيْٓءٌ مِّنْكَ اِنِّيْٓ اَخَافُ اللّٰهَ رَبَّ الْعٰلَمِيْنَ ﴿١٧﴾

१७. (यो त्यस) सैतानसदृश (छ), जसले मानिसलाई भन्ने गर्छ, "विश्वास (स्थापना नगर)," परन्तु जब त्यसले अविश्वास गर्छ, उसले भन्छ, "मेरो तँसित केही सरोकार छैनस म ता विश्वब्रम्हाण्डका स्वामी अल्लाहसित डराउँछु ।"

فَكَانَ عَاقِبَتَهُمَآ اَنَّهُمَا فِى النَّارِ خَالِدَيْنِ فِيْهَا ۗ وَذٰلِكَ جَزٰٓؤُا الظّٰلِمِيْنَ ﴿١٨﴾

१८. तथा तिनीहरू दुबैको परिणाम (के) हुनेछ -भने) तिनीहरू दुबै अग्निमा दाखिल हुनेछन् र त्यहाँ नै सदा निवास गर्नेछन् । अत्याचारी व्यक्तिहरूको प्रतिदान यस्तै हुन्छ

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوا اتَّقُوا اللّٰهَ وَلْتَنْظُرْ نَفْسٌ مَّا قَدَّمَتْ لِغَدٍ ۚ وَاتَّقُوا اللّٰهَ ۗ اِنَّ اللّٰهَ خَبِيْرٌ ۢ بِمَا تَعْمَلُوْنَ ﴿١٩﴾

१९. हे विश्वासीजन हो ! अल्लाहसित डराऊ तथा (प्रत्येक) आत्माले भोलिका निम्ति उसले के(वस्तु) अघि पठाएको छ त्यसप्रति दृष्टि राखोस् । तथा अल्लाहसित डराऊस वस्तुतः तिमीहरूका कार्यहरूप्रति अल्लाह पूर्णविदित रहेका छन् ।

وَلَا تَكُوْنُوْا كَالَّذِيْنَ نَسُوا اللّٰهَ فَاَنْسٰىهُمْ اَنْفُسَهُمْ ۗ اُولٰٓئِكَ هُمُ الْفٰسِقُوْنَ ﴿٢٠﴾

२०. तथा ती व्यक्तिहरूसरह नबन जसले अल्लाहलाई बिर्सिए, अतः उनले तिनीहरूलाई आफ्नै (आत्माका) विस्मरणकारी बनाएका छन् । तिनीहरू नै विद्रोही व्यक्तिहरू रहेका छन् ।

لَا يَسْتَوِيْٓ اَصْحٰبُ النَّارِ وَاَصْحٰبُ الْجَنَّةِ ۗ اَصْحٰبُ الْجَنَّةِ هُمُ الْفَآئِزُوْنَ ﴿٢١﴾

२१. अग्निवासी र बगैंचावासी एकसमान हुन सक्दैनन् । बगैंचावासी व्यक्तिहरू नै कृतार्थ हुनेछन् ।

لَوْ اَنْزَلْنَا هٰذَا الْقُرْاٰنَ عَلٰى جَبَلٍ لَّرَاَيْتَهٗ خَاشِعًا مُّتَصَدِّعًا مِّنْ خَشْيَةِ اللّٰهِ ۗ وَتِلْكَ الْاَمْثَالُ نَضْرِبُهَا لِلنَّاسِ لَعَلَّهُمْ يَتَفَكَّرُوْنَ ﴿٢٢﴾

२२. यदि हामीले यस कुरानलाई कुनै पर्वतमाथि अवतीर्ण गरेका भए, त्यसलाई तिमीले झुकेको र अल्लाहको डरले टुकाटुका भएको अवश्य देख्ने थियौ । तथा यी उदाहरणहरू हुन्, जसलाई हामी मानवजातिका निम्ति प्रस्तुत गर्छौं ताकि तिनीहरू चिन्तन मनन गरून् ।

२३. अल्लाह उनै हुन्, उनीबाहेक अन्य कोही उपासना योग्य छैन, उनी अदृश्य र प्रकाश्य कुराहरूका ज्ञाता रहेका छन् । उनी परम कृपालु, परम करुणामय रहेका छन् ।

هُوَ اللّٰهُ الَّذِيْ لَآ اِلٰهَ اِلَّا هُوَ ۚ عٰلِمُ الْغَيْبِ وَ الشَّهَادَةِ ۚ هُوَ الرَّحْمٰنُ الرَّحِيْمُ ﴿۲۲﴾

२४. अल्लाह उनै हुन्, उनीबाहेक अन्य कोही उपासनायोग्य छैन, तथा उनी सम्राट, परम पवित्र शान्तिका उद्भवस्रोत, सुरक्षा प्रदानकारी, संरक्षक, सर्वविजयी, परम पराकमी, गौरवमय छन्, जुन कुराहरूलाई तिनीहरू (उनका) भागीदार तुल्याउँछन् तिनीहरूभन्दा अल्लाह (अति) उच्च, परम पवित्र रहेका छन् ।

هُوَ اللّٰهُ الَّذِيْ لَآ اِلٰهَ اِلَّا هُوَ ۚ اَلْمَلِكُ الْقُدُّوْسُ السَّلٰمُ الْمُؤْمِنُ الْمُهَيْمِنُ الْعَزِيْزُ الْجَبَّارُ الْمُتَكَبِّرُ ۚ سُبْحٰنَ اللّٰهِ عَمَّا يُشْرِكُوْنَ ﴿۲۳﴾

२५. ती अल्लाह हुन्, उनी सृष्टिकर्ता, सिर्जनहार, आकृति प्रदानकर्ता रहेका छन । (सम्पूर्ण) उत्कृष्ट नामहरू उनकै रहेका छन् । आकाशमण्डल र पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरूले उनकै गुणगान गरिरहेछन्, तथा उनी परम पराकमी, परम तत्वज्ञ रहेका छन् ।

هُوَ اللّٰهُ الْخَالِقُ الْبَارِئُ الْمُصَوِّرُ لَهُ الْاَسْمَآءُ الْحُسْنٰى ۚ يُسَبِّحُ لَهٗ مَا فِي السَّمٰوٰتِ وَ الْاَرْضِ ۚ وَ هُوَ الْعَزِيْزُ الْحَكِيْمُ ﴿۲۴﴾

سُوْرَةُ الْمُمْتَحِنَةِ مَدَنِيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ اَرْبَعَ عَشْرَةَ اٰيَةً وَّ رُكُوْعَانِ

## अल्-मुम्ताहिना:
(हिजरतपछि अवतरित)

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

२. हे विश्वासीजन हो ! मेरा शत्रु र आफ्ना शत्रुलाई तिनीहरूतर्फ प्रेमको सन्देश पठाउँदैं तिनीहरूलाई मित्र नबनाऊ, वस्तुतः तिनीहरू तिमीहरूतर्फ आएको सत्यका अस्वीकारी रहेका छन् तथा तिमीहरूले आफ्ना प्रतिपालक अल्लाहप्रति विश्वास गरेकै कारण सन्देशवाहक र तिमीहरूलाई (तिमीहरूका घरबाट) निष्कासित गर्छन् । यदि तिमीहरू मेरो मार्गमा सघर्ष गर्न तथा मेरो प्रसन्नता प्राप्त गर्न घरबाट प्रस्थान गरेमा गुप्तरूपमा तिनीहरूतर्फ प्रेम(को सन्देश) पठाउँदै (तिनीहरूलाई आफ्ना मित्र नबनाऊ) । वस्तुतः जुन कुरा तिमीहरू लुकाउँछौ र जुन कुरा प्रकट गर्छौ म त्यसलाई राम्ररी जान्दछु । तथा तिमीहरूमध्ये जसले त्यसो गर्छ, त्यो व्यक्ति निश्चयपूर्वक सन्मार्गबाट विचलित हुनपुग्यो ।

يٰۤاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا لَا تَتَّخِذُوْا عَدُوِّيْ وَعَدُوَّكُمْ اَوْلِيَآءَ تُلْقُوْنَ اِلَيْهِمْ بِالْمَوَدَّةِ وَقَدْ كَفَرُوْا بِمَا جَآءَكُمْ مِّنَ الْحَقِّ ۚ يُخْرِجُوْنَ الرَّسُوْلَ وَاِيَّاكُمْ اَنْ تُؤْمِنُوْا بِاللّٰهِ رَبِّكُمْ ۗ اِنْ كُنْتُمْ خَرَجْتُمْ جِهَادًا فِيْ سَبِيْلِيْ وَابْتِغَآءَ مَرْضَاتِيْ ۖ تُسِرُّوْنَ اِلَيْهِمْ بِالْمَوَدَّةِ ۖ وَاَنَا اَعْلَمُ بِمَاۤ اَخْفَيْتُمْ وَمَاۤ اَعْلَنْتُمْ ۗ وَمَنْ يَّفْعَلْهُ مِنْكُمْ فَقَدْ ضَلَّ سَوَآءَ السَّبِيْلِ ②

३. यदि तिमीहरूमाथि तिनीहरूले आफ्नो प्रतिपालकत्व कायम गरेमा, तिनीहरू तिमीहरूका (खुल्ला) शत्रुस्वरूप देखा पर्नेछन् । तथा कुअभिप्रायका साथ तिमीहरूतर्फ आफ्नो हात र जिब्रो चलाउने छन्, तथा तिमीहरू अविश्वासी भइदिए हुन्थ्यो भन्ने तिनीहरूको तीब्र चाहना रहेको छ ।

اِنْ يَّثْقَفُوْكُمْ يَكُوْنُوْا لَكُمْ اَعْدَآءً وَّيَبْسُطُوْۤا اِلَيْكُمْ اَيْدِيَهُمْ وَاَلْسِنَتَهُمْ بِالسُّوْٓءِ وَوَدُّوْا لَوْ تَكْفُرُوْنَ ③

لَنْ تَنْفَعَكُمْ أَرْحَامُكُمْ وَلَا أَوْلَادُكُمْ ۚ يَوْمَ الْقِيَامَةِ ۚ يَفْصِلُ بَيْنَكُمْ ۚ وَاللَّهُ بِمَا تَعْمَلُونَ بَصِيرٌ ﴿٤﴾

४. पुनरुत्थानका दिन तिमीहरूलाई न तिमीहरूको नातेदारीको सम्बन्धले न त तिमीहरूका सन्तानले नै केही लाभ पुऱ्याउनेछन् । उनले तिमीहरूका बीचमा निर्णय गर्नेछन् । तथा अल्लाहले तिमीहरूका सम्पूर्ण कार्यहरू देखिरहेछन् ।

قَدْ كَانَتْ لَكُمْ أُسْوَةٌ حَسَنَةٌ فِي إِبْرَاهِيمَ وَالَّذِينَ مَعَهُ ۖ إِذْ قَالُوا لِقَوْمِهِمْ إِنَّا بُرَآءُ مِنْكُمْ وَمِمَّا تَعْبُدُونَ مِنْ دُونِ اللَّهِ كَفَرْنَا بِكُمْ وَبَدَا بَيْنَنَا وَبَيْنَكُمُ الْعَدَاوَةُ وَالْبَغْضَاءُ أَبَدًا حَتَّىٰ تُؤْمِنُوا بِاللَّهِ وَحْدَهُ إِلَّا قَوْلَ إِبْرَاهِيمَ لِأَبِيهِ لَأَسْتَغْفِرَنَّ لَكَ وَمَا أَمْلِكُ لَكَ مِنَ اللَّهِ مِنْ شَيْءٍ ۖ رَبَّنَا عَلَيْكَ تَوَكَّلْنَا وَإِلَيْكَ أَنَبْنَا وَإِلَيْكَ الْمَصِيرُ ﴿٥﴾

५. इब्राहिम र उनीसित रहेका व्यक्तिहरूमा तिमीहरूका निम्ति एउटा उत्तम नमूना रहेको छ, जब तिनीहरूले आफ्ना मानिसरुलाई भने, "तिमीहरूसित र जसको तिमीहरू अल्लाहबाहेक उपासना गर्छौ, तिनीहरूसित हाम्रो केही सरोकार छैन । (जुन कुराहरूप्रति तिमीहरू विश्वास गर्छौ) हामी ती सम्पूर्ण कुराहरूप्रति अविश्वास गर्छौं । जबसम्म तिमीहरू एकमात्र अल्लाहप्रति विश्वास गर्दैनौ तबसम्मका निम्ति हामी र तिमीहरूका बीचमा शत्रुता र घृणा उत्पन्न हुनपुगेको छ"– सिवाय इब्राहिमले आफ्ना पितालाई दिएको यो वचनबाहेक, (अर्थात्) "यद्यपि अल्लाहको इच्छाविरुद्ध तिम्रो हकमा केही गर्ने ममा सामर्थ्य छैन तथापि म अवश्य तिम्रा निम्ति अल्लाहसित क्षमायाचना गर्नेछु ।" (तिनीहरूले के भन्दै) अल्लाहलाई पुकारे (भने),– "हे हाम्रा प्रतिपालक, तिमीमाथि नै हामी पूर्ण भरोसा राख्छौं, तथा तिमीतर्फ नै (प्रायश्चितसहित) झुक्छौं, तथा (अन्ततः) तिमीतर्फ नै फर्कनु छ ।

رَبَّنَا لَا تَجْعَلْنَا فِتْنَةً لِلَّذِينَ كَفَرُوا وَاغْفِرْ لَنَا رَبَّنَا ۖ إِنَّكَ أَنْتَ الْعَزِيزُ الْحَكِيمُ ﴿٦﴾

६. हे हाम्रा प्रतिपालक, अविश्वासी हरूका निम्ति हामीलाई परीक्षा(को साधन) नबनाऊ, तथा हे हाम्रा प्रतिपालक, हामीलाई क्षमा प्रदान गर, किनभने एकमात्र तिमी नै परम पराक्रमी, परम तत्वज्ञ छौ ।"

لَقَدْ كَانَ لَكُمْ فِيْهِمْ اُسْوَةٌ حَسَنَةٌ لِّمَنْ كَانَ يَرْجُوا اللّٰهَ وَالْيَوْمَ الْاٰخِرَ ۚ وَمَنْ يَّتَوَلَّ فَاِنَّ اللّٰهَ هُوَ الْغَنِيُّ الْحَمِيْدُ ⑥

७. तिनीहरूमा तिमीहरूका निम्ति निश्चय नै उत्तम उदाहरण रहेको छ, अर्थात्, ती (सबै) व्यक्तिहरूका निम्ति जसले अल्लाह र परलोकप्रति आशा राख्छन् । तथा जसले विमुखता अवलम्बन गर्छन्– वस्तुतः अल्लाह परम आत्मनिर्भरशील, सम्पूर्ण प्रशंसाका योग्य छन् ।

عَسَى اللّٰهُ اَنْ يَّجْعَلَ بَيْنَكُمْ وَبَيْنَ الَّذِيْنَ عَادَيْتُمْ مِّنْهُمْ مَّوَدَّةً ۚ وَاللّٰهُ قَدِيْرٌ ۚ وَاللّٰهُ غَفُوْرٌ رَّحِيْمٌ ⑦

८. सम्भव छ, अल्लाहले तिमीहरूका र उनीहरूमध्ये (वर्तमान) तिमीहरूका शत्रु रहेका व्यक्तिहरूका बीचमा प्रेमभाव उत्पन्न गरून्; तथा अल्लाह सर्वशक्तिमान रहेका छन्स तथा अल्लाह परम क्षमाशील, परम करुणामय छन् ।

لَا يَنْهٰىكُمُ اللّٰهُ عَنِ الَّذِيْنَ لَمْ يُقَاتِلُوْكُمْ فِي الدِّيْنِ وَلَمْ يُخْرِجُوْكُمْ مِّنْ دِيَارِكُمْ اَنْ تَبَرُّوْهُمْ وَتُقْسِطُوْٓا اِلَيْهِمْ ۚ اِنَّ اللّٰهَ يُحِبُّ الْمُقْسِطِيْنَ ⑧

९. जसले तिमीहरूसित धर्मलाई लिएर युद्ध गरेनन् तथा तिमीहरूलाई तिमीहरूका घरबाट निष्कासित गरेनन्, तिनीहरूका सम्बन्धमा अल्लाहले तिमीहरूलाई तिनीहरूसित पुण्य गर्न र न्यायपूर्वक व्यवहार गर्नबाट रोक्दैनन्; (न्यायपूर्ण (व्यवहार) गर्ने व्यक्तिहरूसित अल्लाह निश्चय नै प्रेम गर्छन् ।

اِنَّمَا يَنْهٰىكُمُ اللّٰهُ عَنِ الَّذِيْنَ قَاتَلُوْكُمْ فِي الدِّيْنِ وَاَخْرَجُوْكُمْ مِّنْ دِيَارِكُمْ وَظٰهَرُوْا عَلٰٓى اِخْرَاجِكُمْ اَنْ تَوَلَّوْهُمْ ۚ وَمَنْ يَّتَوَلَّهُمْ فَاُولٰٓئِكَ هُمُ الظّٰلِمُوْنَ ⑨

१०. जसले तिमीहरूसित (तिमीहरूका) धर्मलाई लिएर युद्ध गरे, तथा तिमीहरूलाई तिमीहरूका घरबाट निष्कासित गरे तथा तिमीहरूको निष्कासनमा (अन्य व्यक्तिहरूलाई) सहयोग गरे, तिनीहरूका सम्बन्धमा भने अल्लाहले तिमीहरूलाई तिनीहरूसित मित्रता गर्नबाट रोक्छन्, तथा जसले तिनीहरूमध्ये कसैलाई

आफ्नो मित्र बनाउँछ ती व्यक्तिहरू नै सीमोल्लङ्घनकारी रहेका छन् ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا إِذَا جَاءَكُمُ الْمُؤْمِنَاتُ مُهَاجِرَاتٍ فَامْتَحِنُوهُنَّ ۖ اللَّهُ أَعْلَمُ بِإِيمَانِهِنَّ ۖ فَإِنْ عَلِمْتُمُوهُنَّ مُؤْمِنَاتٍ فَلَا تَرْجِعُوهُنَّ إِلَى الْكُفَّارِ ۖ لَا هُنَّ حِلٌّ لَهُمْ وَلَا هُمْ يَحِلُّونَ لَهُنَّ ۖ وَآتُوهُمْ مَا أَنْفَقُوا ۚ وَلَا جُنَاحَ عَلَيْكُمْ أَنْ تَنْكِحُوهُنَّ إِذَا آتَيْتُمُوهُنَّ أُجُورَهُنَّ ۚ وَلَا تُمْسِكُوا بِعِصَمِ الْكَوَافِرِ وَاسْأَلُوا مَا أَنْفَقْتُمْ وَلْيَسْأَلُوا مَا أَنْفَقُوا ۚ ذَٰلِكُمْ حُكْمُ اللَّهِ ۖ يَحْكُمُ بَيْنَكُمْ ۚ وَاللَّهُ عَلِيمٌ حَكِيمٌ ﴿١١﴾

११. हे विश्वासीजन हो ! जब तिमीहरूसमक्ष विश्वासी महिलाहरू आप्रवासीस्वरूप उपस्थित हुन्छन्, तिनीहरूको जाँच पडताल गर । अल्लाहले तिनीहरूको आस्थालाई राम्ररी जान्दछन् । त्यसपछि, यदि तिमीहरूले तिनीहरूलाई साँच्चा विश्वासी पाएमा, तिनीहरूलाई अविश्वासीहरूतर्फ फर्काएर नपठाऊ । यी (महिलाहरू) तिनीहरूका निम्ति वैध रहेका छैनन्, न त तिनीहरू नै यी (महिलाहरू) का निम्ति वैध रहेका छन् । परन्तु (तिनीहरूका अविश्वासी अभिभाबकहरूलाई) उनीहरूले (तिनीहरू माथि) गरेको खर्च फर्काऊ । तथा तिमीहरूले तिनीहरूलाई तिनीहरूको दाइजो दिइसकेपछि, तिनीहरूसित विवाह गर्नाले तिमीहरूलाई केही पाप लाग्नेछैन । तथा अविश्वासी महिलाहरूसित (आफ्नो) वैवाहिक सम्बन्ध नबाँध, परन्तु (तिनीहरूका लागि) तिमीहरूले गरेको खर्च (फर्काइ) माग; तथा -अविश्वासीहरूलाई) तिनीहरूले गरेको खर्चको माग गर्न देऊ । यही अल्लाहको निर्णय रहेको छ । उनी तिमीहरूका बीचमा निर्णय गर्छन् । तथा अल्लाह सर्वज्ञ, तत्वज्ञ छन् ।

وَإِنْ فَاتَكُمْ شَيْءٌ مِنْ أَزْوَاجِكُمْ إِلَى الْكُفَّارِ فَعَاقَبْتُمْ فَآتُوا الَّذِينَ ذَهَبَتْ أَزْوَاجُهُمْ مِثْلَ مَا أَنْفَقُوا ۚ وَاتَّقُوا اللَّهَ الَّذِي أَنْتُمْ بِهِ مُؤْمِنُونَ ﴿١٢﴾

१२. तथा यदि तिमीहरूका पत्नीहरूमध्ये कोही भागेर अविश्वासीहरूतर्फ गएमा र त्यसपछि तिमीहरूले प्रत्युत्तरात्मक कारवाही गर्दा (तिमीहरूलाई अविश्वासी हरूबाट केही सम्पत्ति प्राप्त भएमा) जसका पत्नीहरू भागेर गएका छन् ती विश्वासीहरूलाई तिनीहरूले (आफ्ना पत्नीहरूमाथि) गरेको खर्च बराबर

(खर्च) प्रदान गर । तथा अल्लाहसित डराऊ जसप्रति तिमीहरू विश्वास गर्छौ ।

يَٰٓأَيُّهَا ٱلنَّبِيُّ إِذَا جَآءَكَ ٱلْمُؤْمِنَٰتُ يُبَايِعْنَكَ عَلَىٰٓ أَن لَّا يُشْرِكْنَ بِٱللَّهِ شَيْـًٔا وَلَا يَسْرِقْنَ وَلَا يَزْنِينَ وَلَا يَقْتُلْنَ أَوْلَٰدَهُنَّ وَلَا يَأْتِينَ بِبُهْتَٰنٍ يَفْتَرِينَهُۥ بَيْنَ أَيْدِيهِنَّ وَأَرْجُلِهِنَّ وَلَا يَعْصِينَكَ فِى مَعْرُوفٍ فَبَايِعْهُنَّ وَٱسْتَغْفِرْ لَهُنَّ ٱللَّهَ ۖ إِنَّ ٱللَّهَ غَفُورٌ رَّحِيمٌ ﴿١٢﴾

१२. हे नबी ! जब विश्वासी महिलाहरूले तिनीहरूले कुनै वस्तुलाई अल्लाहका भागीदार बनाउनेछैनन् र तथा तिनीहरूले चोरी गर्नेछैनन्, तथा व्यभिचार गर्नेछैनन्, न आफ्ना सन्तानको हत्या गर्नेछन्, न त तिनीहरूले आफ्नो मनगढन्त मिथ्याभियोग नै कसैमाथि लगाउने छन्, न न्यायसंगत कुराहरूमा तिम्रो अवज्ञा गर्नेछन् भन्ने शर्तमा, तिम्रो हातमा अनुगमनको शपथ खाएमा, तिनीहरूको अनुगमनको अनुबन्धन स्वीकार गर तथा तिनीहरूका निम्ति अल्लाहसित क्षमा याचना गर । वस्तुतः अल्लाह परम क्षमाशील, परम करुणाशील छन् ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوا۟ لَا تَتَوَلَّوْا۟ قَوْمًا غَضِبَ ٱللَّهُ عَلَيْهِمْ قَدْ يَئِسُوا۟ مِنَ ٱلْـَٔاخِرَةِ كَمَا يَئِسَ ٱلْكُفَّارُ مِنْ أَصْحَٰبِ ٱلْقُبُورِ ﴿١٣﴾

१३. हे विश्वासीजन हो ! कुनै यस्तो जातिसित मित्रता नगर जससित अल्लाह क्रोधित रहेका छन्; तिनीहरू परलोकका सम्बन्धमा ठीक त्यसरी नै निराश भएका छन् जसरी अविश्वासी व्यक्तिहरू चिहानमा रहेका व्यक्तिहरूबाट निराश भएका छन् ।

سُوْرَةُ الصَّفِّ مَدَنِيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ خَمْسَ عَشْرَةَ اٰيَةً وَّرُكُوْعَانِ

## अल्-सफ्फ
(हिजरतपछि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

سَبَّحَ لِلّٰهِ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْاَرْضِ ۚ وَهُوَ الْعَزِيْزُ الْحَكِيْمُ ①

२. आकाशमण्डल र पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरूले उनकै गुणगान गरिरहेछन्; तथा उनी सर्वविजयी, परम तत्वज्ञ छन् ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا لِمَ تَقُوْلُوْنَ مَا لَا تَفْعَلُوْنَ ②

३. हे विश्वासीजन हो! तिमीहरू जुन कार्य गर्दैनौ त्यसको उपदेश किन दिन्छौ?

كَبُرَ مَقْتًا عِنْدَ اللّٰهِ اَنْ تَقُوْلُوْا مَا لَا تَفْعَلُوْنَ ③

४. जुन कार्य तिमीहरू गर्दैनौ त्यसबारे उपदेश दिनु अल्लाहको दृष्टिमा घृणायोग्य कुरो रहेको छ ।

اِنَّ اللّٰهَ يُحِبُّ الَّذِيْنَ يُقَاتِلُوْنَ فِيْ سَبِيْلِهٖ صَفًّا كَاَنَّهُمْ بُنْيَانٌ مَّرْصُوْصٌ ④

५. वस्तुतः, अल्लाहले ती व्यक्तिहरूलाई मनपराउँछन्, जसले उनको मार्गमा पङ्क्ति (बद्ध) भई सङ्घर्ष गर्छन्, मानौं तिनीहरू (पगालिएको) सिसाद्वारा निर्माण गरिएको (बलियो) पर्खाल हुन् ।

وَاِذْ قَالَ مُوْسٰى لِقَوْمِهٖ يٰقَوْمِ لِمَ تُؤْذُوْنَنِيْ وَقَدْ تَّعْلَمُوْنَ اَنِّيْ رَسُوْلُ اللّٰهِ اِلَيْكُمْ ۖ فَلَمَّا زَاغُوْٓا اَزَاغَ اللّٰهُ قُلُوْبَهُمْ ۚ وَاللّٰهُ لَا يَهْدِى الْقَوْمَ الْفٰسِقِيْنَ ⑤

६. तथा (स्मरण गर) जब मूसाले आफ्ना मानिसहरूलाई भने, "हे मेरा मानिसहरू हो, तिमीहरू किन मलाई दुःख दिन्छौ तथा म तिमीहरूका निम्ति सन्देशवाहक हुँ भनी तिमीहरू जान्दछौ?" अतः जब तिनीहरू (सन्मार्गबाट) विचलित हुन पुगे, अल्लाहले तिनीहरूको हृदयलाई कुटिल तुल्याए, तथा अल्लाहले विद्रोही व्यक्तिहरूलाई मार्ग देखाउँदैनन् ।

وَاِذْ قَالَ عِيْسَى ابْنُ مَرْيَمَ يٰبَنِيْٓ اِسْرَآءِيْلَ اِنِّيْ رَسُوْلُ اللّٰهِ اِلَيْكُمْ مُّصَدِّقًا لِّمَا بَيْنَ

७. तथा (स्मरण गर) जब मरियमपुत्र, येशुले भने, "हे इजरायलका सन्तान हो,

يَدَيَّ مِنَ التَّوْرٰىةِ وَمُبَشِّرًا بِرَسُوْلٍ يَّاْتِيْ مِنْۢ بَعْدِي اسْمُهٗٓ اَحْمَدُ ؕ فَلَمَّا جَآءَهُمْ بِالْبَيِّنٰتِ قَالُوْا هٰذَا سِحْرٌ مُّبِيْنٌ ۝٦

म निश्चय नै तिमीहरूतर्फ मभन्दा पहिला रहेको तौरातको कुराहरूलाई पूर्ण गर्ने अल्लाहको सन्देशवाहक रहेको छु, तथा यस्ता एकजना सन्देशवाहकको शुभसन्देश दिन्छु जो म पश्चात् आउनेछन् । उनको नाम अहमद हुनेछ ।" तथा जब उनी तिनीहरूसमक्ष स्पष्ट प्रमाणका साथ आए, तिनीहरूले भने, "यो ता खुल्लम खुल्ला जादु हो ।"

وَمَنْ اَظْلَمُ مِمَّنِ افْتَرٰى عَلَى اللّٰهِ الْكَذِبَ وَهُوَ يُدْعٰٓى اِلَى الْاِسْلَامِ ؕ وَاللّٰهُ لَا يَهْدِي الْقَوْمَ الظّٰلِمِيْنَ ۝٧

८. परन्तु जसले अल्लाहविरुद्ध मिथ्या गढ्छ त्यो व्यक्तिभन्दा अधिक अत्याचारी अन्य को हुन सक्छ, यद्यपि उसलाई इस्लामतर्फ आह्वान गरिन्छ? अल्लाहले अत्याचारी मानिसहरूलाई मार्ग देखाउँदैनन्

يُرِيْدُوْنَ لِيُطْفِـُٔوْا نُوْرَ اللّٰهِ بِاَفْوَاهِهِمْ وَاللّٰهُ مُتِمُّ نُوْرِهٖ وَلَوْ كَرِهَ الْكٰفِرُوْنَ ۝٨

९. तिनीहरू आफ्ना मुख(को फुक)ले अल्लाहको ज्योतिलाई निभाउन चाहन्छन्, परन्तु अल्लाहले आफ्नो ज्योतिलाई पूर्णता प्रदान गरेरै छाड्नेछन्, चाहे अविश्वासीहरूले घृणा नै किन नगरून् ।

هُوَ الَّذِيْٓ اَرْسَلَ رَسُوْلَهٗ بِالْهُدٰى وَدِيْنِ الْحَقِّ لِيُظْهِرَهٗ عَلَى الدِّيْنِ كُلِّهٖ وَلَوْ كَرِهَ الْمُشْرِكُوْنَ ۝٩

१०. ती उनी नै हुन्, जसले आफ्ना सन्देशवाहकलाई मार्गदर्शन र साँचो धर्मका साथ पठाए, ताकि त्यसलाई उनले सम्पूर्ण धर्महरूमाथि विजयी तुल्याउन, चाहे ती (अल्लाहका) भागीदार तुल्याउने व्यक्तिहरूले (त्यसलाई) कति नै घृणा किन नगरून् ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا هَلْ اَدُلُّكُمْ عَلٰى تِجَارَةٍ تُنْجِيْكُمْ مِّنْ عَذَابٍ اَلِيْمٍ ۝١٠

११. हे विश्वासीजन हो! के म तिमीहरूलाई यस्तो एउटा व्यापारको खबर दिउँ जसले तिमीहरूलाई पीडादायक दण्डबाट बचाउने छ?

تُؤْمِنُوْنَ بِاللّٰهِ وَرَسُوْلِهٖ وَتُجَاهِدُوْنَ فِيْ سَبِيْلِ اللّٰهِ بِاَمْوَالِكُمْ وَاَنْفُسِكُمْ ؕ ذٰلِكُمْ خَيْرٌ لَّكُمْ اِنْ كُنْتُمْ تَعْلَمُوْنَ ۝١١

१२. त्यो (के) हो (भने),- तिमीहरू अल्लाहप्रति र उनका सन्देशवाहकप्रति विश्वास गर, तथा आफ्नो सम्पत्ति र

ज्यानका साथ अल्लाहको मार्गमा सङ्घर्ष गर । यदि तिमीहरूले जानेमा त्यो तिमीहरूका निम्ति अति उत्तम रहेको छ ।

يَغْفِرْ لَكُمْ ذُنُوبَكُمْ وَيُدْخِلْكُمْ جَنّٰتٍ تَجْرِي مِنْ تَحْتِهَا الْأَنْهٰرُ وَمَسٰكِنَ طَيِّبَةً فِي جَنّٰتِ عَدْنٍ ۚ ذٰلِكَ الْفَوْزُ الْعَظِيمُ ⑫

१२. उनले तिमीहरूलाई तिमीहरूका पापहरू क्षमा गरिदिनेछन्, तथा यस्ता बगैंचाहरूमा तिनीहरूलाई दाखिल गर्नेछन् जसमनि नहरहरू बग्ने गर्छन्, तथा सदारहने बगैंचाहरूमा पवित्र र सुखमय घरहरूमा । यही नै सर्वोत्कृष्ट कृतकार्यता रहेको छ ।

وَأُخْرٰى تُحِبُّونَهَا ۖ نَصْرٌ مِّنَ اللّٰهِ وَفَتْحٌ قَرِيبٌ ۗ وَبَشِّرِ الْمُؤْمِنِينَ ⑬

१४. तथा (उनले तिमीहरूमाथि) एउटा अर्को (अनुग्रह गर्नेछन्) जसलाई तिमीहरू चाहन्छौ: अर्थात्, अल्लाहको सहयोग तथा निकट भविष्यमा प्राप्त हुने एउटा विजय । अत: विश्वासीजनलाई शुभसन्देश देऊ ।

يٰٓأَيُّهَا الَّذِينَ اٰمَنُوا كُونُوٓا أَنْصَارَ اللّٰهِ كَمَا قَالَ عِيسَى ابْنُ مَرْيَمَ لِلْحَوَارِيّٖنَ مَنْ أَنْصَارِيٓ إِلَى اللّٰهِ ۖ قَالَ الْحَوَارِيُّونَ نَحْنُ أَنْصَارُ اللّٰهِ فَاٰمَنَتْ طَّآئِفَةٌ مِّنْ بَنِيٓ إِسْرَآءِيلَ وَكَفَرَتْ طَّآئِفَةٌ ۖ فَأَيَّدْنَا الَّذِينَ اٰمَنُوا عَلٰى عَدُوِّهِمْ فَأَصْبَحُوا ظٰهِرِينَ ⑭

१५. हे विश्वासीजन हो ! अल्लाहका सहयोगी बन, जसरी मरियमपुत्र, ईसाले (आफ्ना) अनुयायीहरूलाई भने, "अल्लाह (को मार्गमा) मेरो सहयोगी को रहेका छन्?" अनुयायीहरूले भने, "हामी अल्लाहका सहयोगी हौं ।" अत: इजरायलका सन्तानमध्ये एउटा समूहले विश्वास स्थापना गऱ्यो, तथा एउटा समूहले भने अविश्वास गऱ्यो । तब हामीले विश्वासीहरूलाई तिनीहरूका शत्रुविरुद्ध सहयोग गऱ्यौं, फलस्वरूप तिनीहरू विजयी भए ।

سُوْرَةُ الْجُمُعَةِ مَدَنِيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ اِثْنَتَا عَشْرَةَ اٰيَةً وَّ رُكُوْعَانِ

## अल्-जुमुअ:
(हिजरतपछि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

يُسَبِّحُ لِلّٰهِ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْاَرْضِ الْمَلِكِ الْقُدُّوْسِ الْعَزِيْزِ الْحَكِيْمِ ②

२. आकाशमण्डल र पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरू अल्लाहको गुणगान गरिरहेछन्, जो परमाधिपति, परम पवित्र, सर्वविजयी, परम तत्वज्ञ छन् ।

هُوَ الَّذِيْ بَعَثَ فِي الْاُمِّيّٖنَ رَسُوْلًا مِّنْهُمْ يَتْلُوْا عَلَيْهِمْ اٰيٰتِهٖ وَ يُزَكِّيْهِمْ وَ يُعَلِّمُهُمُ الْكِتٰبَ وَ الْحِكْمَةَ ۗ وَ اِنْ كَانُوْا مِنْ قَبْلُ لَفِيْ ضَلٰلٍ مُّبِيْنٍ ③

३. ती उनी नै हुन्, जसले अनपढहरूमध्ये एकजना सन्देशवाहक पठाए, जसले उनीहरूलाई उनका चिह्नहरू पाठ गरेर सुनाउँछन्, तथा उनीहरूलाई पवित्र तुल्याउँछन्, तथा उनीहरूलाई पुस्तक र तत्वज्ञान सिकाउँछन्, यद्यपि तिनीहरू त्यसअघि स्पष्टरूपमा पथभ्रष्ट रहेका थिए;

وَّ اٰخَرِيْنَ مِنْهُمْ لَمَّا يَلْحَقُوْا بِهِمْ ؕ وَهُوَ الْعَزِيْزُ الْحَكِيْمُ ④

४. तथा तिनीहरूमध्येबाटै अन्य व्यक्तिहरूतर्फ पनि (उनलाई पठाएका हुन) जो अहिलेसम्म तिनीहरूसित सम्मिलित भएका छैनन्, उनी परम पराक्रमी, परम तत्वज्ञ छन् ।

ذٰلِكَ فَضْلُ اللّٰهِ يُؤْتِيْهِ مَنْ يَّشَآءُ ؕ وَاللّٰهُ ذُو الْفَضْلِ الْعَظِيْمِ ⑤

५. त्यो अल्लाहको कृपा हो; जसलाई उनले चाहन्छन् त्यो प्रदान गर्छन्; तथा

अल्लाह अपार कृपाका स्वामी रहेका छन् ।

५. ती व्यक्तिहरू जसलाई तौरातको - विधानको) भार सुम्पिइएको थियो, परन्तु तिनीहरूले त्यसलाई उठाउन सकेनन्, तिनीहरूको उदाहरण त्यो पुस्तक (को भारी) बोकेको गधासदृश रहेको छ । अल्लाहका निर्देशनहरूलाई अस्वीकार गर्ने मानिसहरूको उदाहरण अति नै निकृष्ट रहेको छ । तथा अत्याचारी मानिसहरूलाई अल्लाहले कदापि मार्ग देखाउँदैनन् ।

مَثَلُ الَّذِيْنَ حُمِّلُوا التَّوْرٰىةَ ثُمَّ لَمْ يَحْمِلُوْهَا كَمَثَلِ الْحِمَارِ يَحْمِلُ اَسْفَارًا ۗ بِئْسَ مَثَلُ الْقَوْمِ الَّذِيْنَ كَذَّبُوْا بِاٰيٰتِ اللّٰهِ ۗ وَاللّٰهُ لَا يَهْدِى الْقَوْمَ الظّٰلِمِيْنَ ۝٥

६. तिमी भन, "ए यहुदीहरू हो, यदि अन्य (सबै) मानिसहरूलाई छाडी केवल तिमीहरू नै अल्लाहका मित्र हौ भन्ने तिमीहरूको सोचाई रहेको छ भने, र यदि तिमीहरू साँचा हौ भने मृत्युको कामना गर ।"

قُلْ يٰۤاَيُّهَا الَّذِيْنَ هَادُوْۤا اِنْ زَعَمْتُمْ اَنَّكُمْ اَوْلِيَآءُ لِلّٰهِ مِنْ دُوْنِ النَّاسِ فَتَمَنَّوُا الْمَوْتَ اِنْ كُنْتُمْ صٰدِقِيْنَ ۝٦

७. परन्तु तिनीहरूले (आफूभन्दा पहिला) आफ्ना हातले पठाएको कमाइका कारण कदापि त्यसको कामना गर्नेछैनन् । तथा जसले अत्याचार गर्छन् तिनीहरूलाई अल्लाहले अति राम्ररी जान्दछन् ।

وَلَا يَتَمَنَّوْنَهٗۤ اَبَدًاۢ بِمَا قَدَّمَتْ اَيْدِيْهِمْ ۗ وَاللّٰهُ عَلِيْمٌۢ بِالظّٰلِمِيْنَ ۝٧

८. तिमी भन, "त्यो मृत्यु, जसबाट तिमीहरू भाग्छौ त्यसले अवश्य तिमीहरूलाई समात्नेछ । तब तिमीहरूलाई अदृश्य र दृश्य कुराहरूका ज्ञातातर्फ फर्काइनेछ, तथा उनले तिमीहरूलाई तिमीहरूले गर्ने गरेका कार्यहरूबारे जानकारी दिनेछन् ।'

قُلْ اِنَّ الْمَوْتَ الَّذِيْ تَفِرُّوْنَ مِنْهُ فَاِنَّهٗ مُلٰقِيْكُمْ ثُمَّ تُرَدُّوْنَ اِلٰى عٰلِمِ الْغَيْبِ وَالشَّهَادَةِ فَيُنَبِّئُكُمْ بِمَا كُنْتُمْ تَعْمَلُوْنَ ۝٨

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوٓا۟ إِذَا نُودِىَ لِلصَّلَوٰةِ مِن يَوْمِ ٱلْجُمُعَةِ فَٱسْعَوْا۟ إِلَىٰ ذِكْرِ ٱللَّهِ وَذَرُوا۟ ٱلْبَيْعَ ۚ ذَٰلِكُمْ خَيْرٌ لَّكُمْ إِن كُنتُمْ تَعْلَمُونَ ﴿١٠﴾

१०. हे विश्वासीजन हो, जब जुमुअःको (शुकबारको) दिन नमाजका निम्ति आह्वान गरिन्छ तब अल्लाहलाई स्मरण गर्न शीघ्रतापूर्वक जाने गर, तथा (सबै) व्यावसायिक कारोबार छाडिदेऊ । यदि तिमीहरू जान्दछौ भने त्यो तिमीहरूका निम्ति उत्तम रहेको छ ।

فَإِذَا قُضِيَتِ ٱلصَّلَوٰةُ فَٱنتَشِرُوا۟ فِى ٱلْأَرْضِ وَٱبْتَغُوا۟ مِن فَضْلِ ٱللَّهِ وَٱذْكُرُوا۟ ٱللَّهَ كَثِيرًا لَّعَلَّكُمْ تُفْلِحُونَ ﴿١١﴾

११. तथा जब नमाज समाप्त हुन्छ, तब धर्तीमा छरपस्ट होऊ र अल्लाहको कृपा प्राप्त गर्ने प्रचेष्टा गर, तथा अल्लाहलाई अत्याधिक स्मरण गर, ताकि तिमीहरू कृतार्थ हुन सक ।

وَإِذَا رَأَوْا۟ تِجَٰرَةً أَوْ لَهْوًا ٱنفَضُّوٓا۟ إِلَيْهَا وَتَرَكُوكَ قَآئِمًا ۚ قُلْ مَا عِندَ ٱللَّهِ خَيْرٌ مِّنَ ٱللَّهْوِ وَمِنَ ٱلتِّجَٰرَةِ ۚ وَٱللَّهُ خَيْرُ ٱلرَّٰزِقِينَ ﴿١٢﴾

ع ٢ / ١٢

१२. परन्तु जब तिनीहरूले कुनै व्यापार अथवा कुनै कीडा(का वस्तुहरू)लाई देख्छन्, तिनीहरू त्यसतर्फ दगुर्छन्, र तिमीलाई उभिएकै (अवस्थामा) छाड्छन् । तिमी भन, "अल्लाहसित जुन वस्तु रहेको छ त्यो कीडा र व्यापारका वस्तुहरूभन्दा उत्तम रहेको छ । तथा, अल्लाह सर्वोत्तम जीविका प्रदानकारी रहेका छन् ।"

سُوْرَةُ الْمُنٰفِقُوْنَ مَدَنِيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ اِثْنَتَا عَشْرَةَ اٰيَةً وَّرُكُوْعَانِ

## अल्-मुनाफिकून
(हिजरतपछि अवतरित)

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

२. जब ढोँगी व्यक्तिहरू तिमीसमक्ष आउँछन्, तिनीहरू (के) भन्छन् (भने), "तिमी निस्सन्देह अल्लाहका सन्देशवाहक हौ भनी हामी साक्षी दिन्छौं ।" तथा तिमी वस्तुतः उनकै सन्देशवाहक हौ भनी अल्लाह जान्दछन्, परन्तु ती ढोँगी व्यक्तिहरू निश्चयपूर्वक मिथ्यावादी रहेका छन् भनी अल्लाह साक्षी दिन्छन् ।

اِذَا جَآءَكَ الْمُنٰفِقُوْنَ قَالُوْا نَشْهَدُ اِنَّكَ لَرَسُوْلُ اللّٰهِ ۘ وَاللّٰهُ يَعْلَمُ اِنَّكَ لَرَسُوْلُهٗ ؕ وَاللّٰهُ يَشْهَدُ اِنَّ الْمُنٰفِقِيْنَ لَكٰذِبُوْنَ ②

३. तिनीहरूले आफ्नो शपथलाई ढाल बनाएका छन्; यस प्रकार तिनीहरू (मानिसहरूलाई) अल्लाहको मार्गबाट रोक्छन् । तिनीहरू जुन कार्य गरिरहेछन् त्यो अति नै निकृष्ट रहेको छ ।

اِتَّخَذُوْۤا اَيْمَانَهُمْ جُنَّةً فَصَدُّوْا عَنْ سَبِيْلِ اللّٰهِ ؕ اِنَّهُمْ سَآءَ مَا كَانُوْا يَعْمَلُوْنَ ③

४. यसको कारण के हो भने, तिनीहरूले (पहिला) विश्वास स्थापना गरे, त्यसपछि अविश्वासी बने । अतः तिनीहरूको हृदयमाथि एउटा मोहर लगाइयो (त्यसको फलस्वरूप) तिनीहरू कुरा बुझ्दैनन् ।

ذٰلِكَ بِاَنَّهُمْ اٰمَنُوْا ثُمَّ كَفَرُوْا فَطُبِعَ عَلٰى قُلُوْبِهِمْ فَهُمْ لَا يَفْقَهُوْنَ ④

५. तथा जब तिमी तिनीहरूमाथि दृष्टि गर्छौ, तिनीहरूको रूपरङ्ग तिमीलाई मनपर्छ; तथा यदि तिनीहरूले बोलेमा तिमी तिनीहरूको वार्ता सुन्छौ (वस्तुतः), तिनीहरू टेका लगाएका सुकेका हाँगाहरू जस्तै हुन् । हरेक सङ्कट तिनीहरू माथि नै आइपर्नेछ भनी तिनीहरू ठराउँछन् । तिनीहरू शत्रु हुन्, त्यसकारण तिनीहरूबाट

وَاِذَا رَاَيْتَهُمْ تُعْجِبُكَ اَجْسَامُهُمْ ؕ وَاِنْ يَّقُوْلُوْا تَسْمَعْ لِقَوْلِهِمْ ؕ كَاَنَّهُمْ خُشُبٌ مُّسَنَّدَةٌ ؕ يَحْسَبُوْنَ كُلَّ صَيْحَةٍ عَلَيْهِمْ ؕ هُمُ الْعَدُوُّ فَاحْذَرْهُمْ ؕ قَاتَلَهُمُ اللّٰهُ ؗ اَنّٰى يُؤْفَكُوْنَ ⑤

सावधान रहने गर । अल्लाहले तिनीहरूको सर्वनाश गरून् । कसरी तिनीहरूलाई विमुख तुल्याइँदैछ !

وَإِذَا قِيلَ لَهُمْ تَعَالَوْا يَسْتَغْفِرْ لَكُمْ رَسُولُ اللَّهِ لَوَّوْا رُءُوسَهُمْ وَرَأَيْتَهُمْ يَصُدُّونَ وَهُمْ مُسْتَكْبِرُونَ ٥

६. तथा जब तिनीहरूलाई भनिन्छ, "तिमीहरू आऊ, ताकि अल्लाहका सन्देशवाहकले तिमीहरूका निम्ति क्षमायाचना गरून्" (तब) तिनीहरू आफ्नो टाउको एकतर्फ घुमाउँछन्, तथा तिमी तिनीहरूलाई अहङ्कारका साथ पछि हटेको देख्छौ ।

سَوَاءٌ عَلَيْهِمْ أَسْتَغْفَرْتَ لَهُمْ أَمْ لَمْ تَسْتَغْفِرْ لَهُمْ لَنْ يَغْفِرَ اللَّهُ لَهُمْ إِنَّ اللَّهَ لَا يَهْدِي الْقَوْمَ الْفَاسِقِينَ ٦

७. चाहे तिमी तिनीहरूका निम्ति क्षमायाचना गर अथवा चाहे नगर तिनीहरूका लागि एउटै कुरा हो । अल्लाहले तिनीहरूलाई कदापि क्षमा गर्नेछैनन् । अल्लाहले विद्रोही मानिसहरूलाई कदापि मार्ग देखाउँदैनन् ।

هُمُ الَّذِينَ يَقُولُونَ لَا تُنْفِقُوا عَلَىٰ مَنْ عِنْدَ رَسُولِ اللَّهِ حَتَّىٰ يَنْفَضُّوا وَلِلَّهِ خَزَائِنُ السَّمَاوَاتِ وَالْأَرْضِ وَلَٰكِنَّ الْمُنَافِقِينَ لَا يَفْقَهُونَ ٧

८. तिनीहरू ती व्यक्तिहरू नै हुन्, जसले भन्छन्, "जुन व्यक्तिहरू अल्लाहका सन्देशवाहकसित छन् तिनीहरूमाथि खर्च नगर ताकि तिनीहरू (उनलाई छाडेर) भागून्," वस्तुतः आकाशमण्डल र पृथ्वीका खजानाहरू अल्लाहकै रहेका छन्, परन्तु ती ढोंगी व्यक्तिहरू बुझ्दैनन् ।

يَقُولُونَ لَئِنْ رَجَعْنَا إِلَى الْمَدِينَةِ لَيُخْرِجَنَّ الْأَعَزُّ مِنْهَا الْأَذَلَّ وَلِلَّهِ الْعِزَّةُ وَلِرَسُولِهِ وَلِلْمُؤْمِنِينَ وَلَٰكِنَّ الْمُنَافِقِينَ لَا يَعْلَمُونَ ٨

९. तिनीहरू भन्छन्, "यदि हामीहरू मदिनातर्फ फर्केर गयौं भने सबैभन्दा सम्माननीय व्यक्तिले सबैभन्दा तुच्छ व्यक्तिलाई त्यहाँबाट निष्कासित गर्नेछ," वस्तुतः अल्लाह र उनका सन्देशवाहक तथा विश्वासीजनलाई नै (साँच्चो) सम्मान प्राप्त छ, परन्तु ती ढोंगी व्यक्तिहरू जान्दैनन् ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا لَا تُلْهِكُمْ أَمْوَالُكُمْ

१०. हे विश्वासीजन हो ! तिमीहरूको सम्पत्ति र सन्तानले तिमीहरूलाई

وَلَآ اَوْلَادُكُمْ عَنْ ذِكْرِ اللّٰهِ ۚ وَمَنْ يَّفْعَلْ ذٰلِكَ فَاُولٰٓئِكَ هُمُ الْخٰسِرُوْنَ ﴿٩﴾

अल्लाहको स्मरणबाट विमुख नतुल्याउन् । तथा जसले त्यसो गर्छन्– तिनीहरू नै घाटाग्रस्त व्यक्तिहरू रहेका छन् ।

وَاَنْفِقُوْا مِنْ مَّا رَزَقْنٰكُمْ مِّنْ قَبْلِ اَنْ يَّاْتِيَ اَحَدَكُمُ الْمَوْتُ فَيَقُوْلَ رَبِّ لَوْلَآ اَخَّرْتَنِيْٓ اِلٰٓى اَجَلٍ قَرِيْبٍ ۙ فَاَصَّدَّقَ وَاَكُنْ مِّنَ الصّٰلِحِيْنَ ﴿١٠﴾

११. तथा हामीले प्रदान गरेका वस्तुहरूबाट तिमीहरूमध्ये कसैमाथि मृत्युघडी आउनुभन्दा पहिला नै खर्च गर ताकि उसले (यसो) भन्नु (नपरोस्), "हे मेरा प्रतिपालक ! यदि तिमीले मलाई केही क्षणमात्र अवसर दिएका भए, म दान दक्षिणा दिने थिएँ र धर्मनिष्ठ व्यक्तिहरूमध्येकै (एक) हुने थिएँ ।"

وَلَنْ يُّؤَخِّرَ اللّٰهُ نَفْسًا اِذَا جَآءَ اَجَلُهَا ۗ وَاللّٰهُ خَبِيْرٌۢ بِمَا تَعْمَلُوْنَ ﴿١١﴾

१२. तथा कुनै ज्यानको निर्धारित समय आइ पुगेपछि अल्लाहले त्यसलाई अवसर प्रदान गर्दैनन्; तथा तिमीहरूका कार्यहरूप्रति अल्लाह पूर्णविदित रहेका छन् ।

سُورَةُ التَّغَابُنِ مَدَنِيَّةٌ وَهِيَ مَعَ الْبَسْمَلَةِ تِسْعَ عَشْرَةَ آيَةً وَرُكُوعَانِ

## अल्-तगाबुन
(हिजरतपछि अवतरित)

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

२. आकाशमण्डल र पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरूले अल्लाहकै गुणगान गरिरहेछन्; राज्य उनकै रहेको छ भने प्रशंसा पनि उनकै रहेको छ, तथा सम्पूर्ण वस्तुहरूमाथि उनी पूर्ण सामर्थ्यवान रहेका छन् ।

يُسَبِّحُ لِلّٰهِ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْاَرْضِ ۚ لَهُ الْمُلْكُ وَلَهُ الْحَمْدُ ۫ وَهُوَ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ②

३. ती उनी नै हुन्, जसले तिमीहरूलाई सृष्टि गरे, अतः तिमीहरूमध्ये केही अविश्वासी बन्छन् तथा तिमीहरूमध्ये केही भने विश्वासी बन्छन् । तथा तिमीहरूका कार्यहरूलाई अल्लाहले देखिरहेछन् ।

هُوَ الَّذِيْ خَلَقَكُمْ فَمِنْكُمْ كَافِرٌ وَّمِنْكُمْ مُّؤْمِنٌ ؕ وَاللّٰهُ بِمَا تَعْمَلُوْنَ بَصِيْرٌ ③

४. आकाशमण्डल र पृथ्वीलाई उनले सत्यमा आधारित सिर्जना गरे, तथा उनले तिमीहरूलाई आकृति प्रदान गरे तथा तिमीहरूको अति सुन्दर रूप बनाए, तथा (अन्ततः) उनीतर्फै फर्केर जानु छ ।

خَلَقَ السَّمٰوٰتِ وَالْاَرْضَ بِالْحَقِّ وَصَوَّرَكُمْ فَاَحْسَنَ صُوَرَكُمْ ۚ وَاِلَيْهِ الْمَصِيْرُ ④

५. आकाशमण्डल र पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरूलाई उनी जान्दछन्, तथा जुनकुरा तिमीहरू लुकाउँछौ त्यसलाई उनी जान्दछन् तथा जुनकुरा प्रकट गर्छौ त्यसलाई पनि; तथा छातीभित्र रहेका (सबै) कुराहरूलाई अल्लाहले अति राम्ररी जान्दछन् ।

يَعْلَمُ مَا فِي السَّمٰوٰتِ وَالْاَرْضِ وَيَعْلَمُ مَا تُسِرُّوْنَ وَمَا تُعْلِنُوْنَ ؕ وَاللّٰهُ عَلِيْمٌ ۢ بِذَاتِ الصُّدُوْرِ ⑤

६. के पहिलाका अविश्वासी व्यक्तिहरूको खबर तिमीहरूलाई प्राप्त भएको छैन र? अतः तिनीहरूले आफ्नो

اَلَمْ يَاْتِكُمْ نَبَؤُا الَّذِيْنَ كَفَرُوْا مِنْ قَبْلُ ۫ فَذَاقُوْا وَبَالَ اَمْرِهِمْ وَلَهُمْ عَذَابٌ اَلِيْمٌ ⑥

व्यवहारको निकृष्ट परिणाम चाखे, तथा तिनीहरूलाई पीडादायक दण्ड मिल्यो ।

ذٰلِكَ بِاَنَّهٗ كَانَتْ تَّاْتِيْهِمْ رُسُلُهُمْ بِالْبَيِّنٰتِ فَقَالُوْٓا اَبَشَرٌ يَّهْدُوْنَنَا ز فَكَفَرُوْا وَتَوَلَّوْا وَّاسْتَغْنَى اللّٰهُ ؕ وَاللّٰهُ غَنِيٌّ حَمِيْدٌ ۝

७. त्यसो (किन) भयो (भने), तिनीहरूका सन्देशवाहकहरू तिनीहरूसमक्ष स्पष्ट चिह्नहरू लिएर आए, परन्तु तिनीहरूले भने, "के मानिसहरूले हामीलाई मार्ग देखाउनेछन् र?" अतः तिनीहरूले अविश्वास गरे र विमुख भए, परन्तु अल्लाहलाई कदापि (तिनीहरूको) कुनै आवश्यकता थिएन; तथा अल्लाह पूर्ण आत्मनिर्भरशील, सम्पूर्ण प्रशंसाका योग्य रहेका छन् ।

زَعَمَ الَّذِيْنَ كَفَرُوْٓا اَنْ لَّنْ يُّبْعَثُوْا ؕ قُلْ بَلٰى وَرَبِّيْ لَتُبْعَثُنَّ ثُمَّ لَتُنَبَّؤُنَّ بِمَا عَمِلْتُمْ ؕ وَذٰلِكَ عَلَى اللّٰهِ يَسِيْرٌ ۝

८. अविश्वासीहरू तिनीहरूलाई (जीवित गरेर) उत्थान गरिनेछैन भनी ठान्छन् । तिमी भन, "हो, मेरा प्रभुको शपथ, तिमीहरूलाई अवश्य (जीवित गरेर) उठाइनेछ; त्यसपछि तिमीहरूलाई अवश्य तिमीहरूले गरेका कार्यहरूबारे अवगत गरिने छ । तथा त्यो (कार्य) अल्लाहका निम्ति अति सरल रहेको छ ।

فَاٰمِنُوْا بِاللّٰهِ وَرَسُوْلِهٖ وَالنُّوْرِ الَّذِيْٓ اَنْزَلْنَا ؕ وَاللّٰهُ بِمَا تَعْمَلُوْنَ خَبِيْرٌ ۝

९. त्यसकारण, अल्लाह र उनका सन्देशवाहक तथा हामीले अवतीर्ण गरेको ज्योतिप्रति विश्वास गर । तथा तिमीहरूका सम्पूर्ण कार्यहरूप्रति अल्लाह पूर्णविदित छन्

يَوْمَ يَجْمَعُكُمْ لِيَوْمِ الْجَمْعِ ذٰلِكَ يَوْمُ التَّغَابُنِ ؕ وَمَنْ يُّؤْمِنْ بِاللّٰهِ وَيَعْمَلْ صَالِحًا يُّكَفِّرْ عَنْهُ سَيِّاٰتِهٖ وَيُدْخِلْهُ جَنّٰتٍ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ خٰلِدِيْنَ فِيْهَآ اَبَدًا ؕ ذٰلِكَ الْفَوْزُ الْعَظِيْمُ ۝

१०. त्यस भेलाको दिन, जब उनले तिमीहरूलाई एकत्रित गर्नेछन्, त्यो दिन परस्पर हानि (र लाभ) को दिन हुनेछ । तथा जसले अल्लाहप्रति विश्वास गर्छन् र पुण्यकार्य गर्छन्(उनले तिनीहरूका कार्यहरूको नराम्रो (परिणाम) लाई तिनीहरूबाट दूर गर्नेछन् तथा उनले तिनीहरूलाई यस्ता बगैंचाहरूमा सदा बसोबास गर्नका निम्ति दाखिल गर्नेछन् जसमनि नहरहरू बग्ने गर्छन् । त्यही नै

सर्वोकृष्ट कृतकार्यता रहेको छ ।

وَالَّذِيْنَ كَفَرُوْا وَكَذَّبُوْا بِاٰيٰتِنَآ اُولٰٓئِكَ اَصْحٰبُ النَّارِ خٰلِدِيْنَ فِيْهَا ؕ وَبِئْسَ الْمَصِيْرُ ﴿١١﴾

११. परन्तु जसले अविश्वास गर्छन् र हाम्रा निर्देशनहरूलाई अस्वीकार गर्छन् तिनीहरू भने अग्निका निवासी हुन पुग्नेछन्, जहाँ तिनीहरू रहनेछन्; तथा त्यो अति नै निकृष्ट गन्तव्यस्थान रहेको छ !

مَآ اَصَابَ مِنْ مُّصِيْبَةٍ اِلَّا بِاِذْنِ اللّٰهِ ؕ وَمَنْ يُّؤْمِنْۢ بِاللّٰهِ يَهْدِ قَلْبَهٗ ؕ وَاللّٰهُ بِكُلِّ شَيْءٍ عَلِيْمٌ ﴿١٢﴾

१२. अल्लाहको आदेशबिना कुनै सङ्कट अवतीर्ण हुदैन । तथा जसले अल्लाहप्रति विश्वास गर्छ उनले त्यसको हृदयलाई (ठीक दिशामा) मार्गदर्शन गर्छन् । तथा सम्पूर्ण वस्तुहरूलाई अल्लाहले अति राम्ररी जान्दछन् ।

وَاَطِيْعُوا اللّٰهَ وَاَطِيْعُوا الرَّسُوْلَ ۚ فَاِنْ تَوَلَّيْتُمْ فَاِنَّمَا عَلٰى رَسُوْلِنَا الْبَلٰغُ الْمُبِيْنُ ﴿١٣﴾

१३. तथा अल्लाह र सन्देशवाहकको आज्ञापालन गर । परन्तु यदि तिमीहरू विमुख भयौ भने, हाम्रा सन्देशवाहकको जिम्मेवारी ता केवल स्पष्टरूपमा (सन्देश) पुऱ्याउनु रहेको छ ।

اَللّٰهُ لَآ اِلٰهَ اِلَّا هُوَ ؕ وَعَلَى اللّٰهِ فَلْيَتَوَكَّلِ الْمُؤْمِنُوْنَ ﴿١٤﴾

१४. अल्लाह ! उनीबाहेक अन्य कोही उपास्य छैन; अतः विश्वासीहरूले अल्लाहमाथि नै भरोसा गर्नु उचित हुन्छ ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْٓا اِنَّ مِنْ اَزْوَاجِكُمْ وَاَوْلَادِكُمْ عَدُوًّا لَّكُمْ فَاحْذَرُوْهُمْ ۚ وَاِنْ تَعْفُوْا وَتَصْفَحُوْا وَتَغْفِرُوْا فَاِنَّ اللّٰهَ غَفُوْرٌ رَّحِيْمٌ ﴿١٥﴾

१५. हे विश्वासीजन हो ! निश्चय नै तिमीहरूका पत्नीहरू र सन्तानमध्ये (केही निश्चित रूपमा) तिमीहरूका शत्रु रहेका छन्, त्यसकारण तिनीहरूबाट सावधान रहने गर । तथा यदि तिमीहरूले मार्जना र क्षमा तथा माफ गरेमा, निश्चय नै अल्लाह परम क्षमाशील, परम करुणाशील छन् ।

اِنَّمَآ اَمْوَالُكُمْ وَاَوْلَادُكُمْ فِتْنَةٌ ؕ وَاللّٰهُ عِنْدَهٗٓ اَجْرٌ عَظِيْمٌ ﴿١٦﴾

१६. वस्तुतः, तिमीहरूको सम्पत्ति र तिमीहरूका सन्तान परीक्षा (का साधनस्वरूप) हुन, परन्तु अल्लाहसित अपार प्रतिदान रहेको छ ।

فَاتَّقُوا اللّٰهَ مَا اسْتَطَعْتُمْ وَاسْمَعُوْا وَ اَطِيْعُوْا وَ اَنْفِقُوْا خَيْرًا لِّاَنْفُسِكُمْ ؕ وَ مَنْ يُّوْقَ شُحَّ نَفْسِهٖ فَاُولٰٓئِكَ هُمُ الْمُفْلِحُوْنَ ⑯

१७. अत: यथाशक्ति अल्लाहको डर मनमा धारण गर, तथा (कुरो) सुन र आज्ञापालन गर, तथा (उनको मार्गमा) खर्च गर; यो तिमीहरूको आफ्नो (ज्यानका) निम्ति उत्तम हुनेछ । तथा जसलाई उसको आफ्नो मनको कृपणताबाट बचाइन्छ– तिनीहहरू नै कृतार्थ हुनेछन् ।

اِنْ تُقْرِضُوا اللّٰهَ قَرْضًا حَسَنًا يُّضٰعِفْهُ لَكُمْ وَ يَغْفِرْ لَكُمْ ؕ وَاللّٰهُ شَكُوْرٌ حَلِيْمٌ ⑰

१८. यदि तिमीहरूले अल्लाहलाई उत्तम ऋण दिएमा, उनले तिमीहरूका निम्ति त्यसलाई अत्याधिक बढाउनेछन्; तथा अल्लाह परम गुणग्राही, परम धैर्यशील छन्,

عٰلِمُ الْغَيْبِ وَالشَّهَادَةِ الْعَزِيْزُ الْحَكِيْمُ ⑱

१९. उनी अदृश्य र दृश्य कुराहरूका ज्ञाता, सर्वविजयी, तत्वज्ञ रहेका छन् ।

سُوْرَةُ الطَّلَاقِ مَدَنِيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ ثَلٰثَ عَشْرَةَ اٰيَةً وَّرُكُوْعَانِ

## अल्-तलाक
(हिजरतपछि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

يٰۤاَيُّهَا النَّبِيُّ اِذَا طَلَّقْتُمُ النِّسَآءَ
فَطَلِّقُوْهُنَّ لِعِدَّتِهِنَّ وَاَحْصُوا الْعِدَّةَ ۚ
وَاتَّقُوا اللّٰهَ رَبَّكُمْ ۚ لَا تُخْرِجُوْهُنَّ مِنْۢ
بُيُوْتِهِنَّ وَلَا يَخْرُجْنَ اِلَّآ اَنْ يَّاْتِيْنَ
بِفَاحِشَةٍ مُّبَيِّنَةٍ ؕ وَتِلْكَ حُدُوْدُ اللّٰهِ ؕ
وَمَنْ يَّتَعَدَّ حُدُوْدَ اللّٰهِ فَقَدْ ظَلَمَ
نَفْسَهٗ ؕ لَا تَدْرِيْ لَعَلَّ اللّٰهَ يُحْدِثُ
بَعْدَ ذٰلِكَ اَمْرًا ②

२. हे नबी (Prophet) ! जब तिमीहरू महिलाहरूलाई तलाक (पारपाचुके) दिन्छौ, (निर्धारित) अवधिका निम्ति पारपाचुके दिने गर, तथा त्यो अवधिको गणना गर, तथा आफ्ना प्रभु, अल्लाहसित डराऊ । जबसम्म तिनीहरू कुनै स्पष्ट अशुद्ध कार्यमा लिप्त हुँदैनन् तिनीहरूलाई उनीहरूका घरबाट निष्कासित नगर, न त तिनीहरू (आफै) ले घर त्यागून् । तथा यी अल्लाहद्वारा निर्धारण गरिएका सीमाहरू हुन्, तथा जसले अल्लाहका सीमाहरूको उल्लङ्घन गर्छ, त्यसले निस्सन्देह आफनै आत्मामाथि अत्याचार गर्छ । तिमी जान्दैनौ, सम्भवतः अल्लाहले त्यसपछि कुनै नवीन कुरो प्रकाशमा ल्याउनेछन् ।

فَاِذَا بَلَغْنَ اَجَلَهُنَّ فَاَمْسِكُوْهُنَّ
بِمَعْرُوْفٍ اَوْ فَارِقُوْهُنَّ بِمَعْرُوْفٍ وَّ
اَشْهِدُوْا ذَوَيْ عَدْلٍ مِّنْكُمْ وَ اَقِيْمُوا
الشَّهَادَةَ لِلّٰهِ ؕ ذٰلِكُمْ يُوْعَظُ بِهٖ مَنْ كَانَ
يُؤْمِنُ بِاللّٰهِ وَالْيَوْمِ الْاٰخِرِ ۬ؕ وَ مَنْ
يَّتَّقِ اللّٰهَ يَجْعَلْ لَّهٗ مَخْرَجًا ③

३. अतः जब तिनीहरू आफ्नो (निर्धारित) म्यादसम्म पुग्छन्, तब तिनीहरूलाई या त न्यायोचित तरिकाले रोकेर राख, अथवा न्यायोचित ढंगले तिनीहरूलाई विदा गर, तथा तिमीहरूमध्येकै दुईजना न्यायी व्यक्तिहरूलाई साक्षी राख, तथा अल्लाहका निम्ति साँच्चो गवाही देऊ । जसले अल्लाह र अन्तिम दिनप्रति विश्वास गर्छ त्यसलाई यो उपदेश दिइन्छ । तथा जसले अल्लाहको डर मनमा धारण गर्छ– त्यस व्यक्तिका निम्ति उनले कुनै उपाय निकाल्नेछन् ।

وَّيَرْزُقْهُ مِنْ حَيْثُ لَا يَحْتَسِبُ ؕ وَ مَنْ

४. तथा त्यसका निम्ति उनले त्यसले आशा नै नगरेको (स्थान)बाट जीविका प्रदान

يَتَوَكَّلْ عَلَى اللَّهِ فَهُوَ حَسْبُهُ ۚ إِنَّ اللَّهَ بَالِغُ أَمْرِهِ ۚ قَدْ جَعَلَ اللَّهُ لِكُلِّ شَيْءٍ قَدْرًا ﴿٣﴾

गर्नेछन् । तथा जसले अल्लाहमाथि आफ्नो भरोसा राख्छ– उनी त्यस व्यक्तिका निम्ति पर्याप्त रहेका छन् । अल्लाहले अवश्य आफ्नो उद्देश्य पूर्ण गरेरै छाड्छन् । अल्लाहले हरेक वस्तुको निम्ति एउटा मापदण्ड निर्धारण गरेका छन् ।

وَاللَّائِي يَئِسْنَ مِنَ الْمَحِيضِ مِن نِّسَائِكُمْ إِنِ ارْتَبْتُمْ فَعِدَّتُهُنَّ ثَلَاثَةُ أَشْهُرٍ وَاللَّائِي لَمْ يَحِضْنَ ۚ وَأُولَاتُ الْأَحْمَالِ أَجَلُهُنَّ أَن يَضَعْنَ حَمْلَهُنَّ ۚ وَمَن يَتَّقِ اللَّهَ يَجْعَل لَّهُ مِنْ أَمْرِهِ يُسْرًا ﴿٤﴾

४. तथा यदि तिमीहरूलाई आफ्ना ती मासिक धर्मबाट निराश भएका महिलाहरूका बारेमा सन्देह रहेमा, तिनीहरूको निर्धारित म्याद तीन महीना रहेको छ (भन्ने थाहा पाइराख), तथा आफ्नो मासिक धर्म प्रारम्भ नभएकाहरूका लागि पनि त्यही लागू हुन्छ । तथा शिशु भएका (गर्भवती) महिलाहरूको म्याद भने उनीहरूले बोझ नउतारुन्जेलसम्म रहेको छ । तथा जो व्यक्ति अल्लाहसित डराउँछ, उनले त्यसका मामिलामा सहुलियत (को साधन) उत्पन्न गरिदिन्छन् ।

ذَٰلِكَ أَمْرُ اللَّهِ أَنزَلَهُ إِلَيْكُمْ ۚ وَمَن يَتَّقِ اللَّهَ يُكَفِّرْ عَنْهُ سَيِّئَاتِهِ وَيُعْظِمْ لَهُ أَجْرًا ﴿٥﴾

६. यो अल्लाहको आदेश हो जुन उनले तिमीहरूतर्फ अवतीर्ण गरेका छन् । तथा जो व्यक्ति अल्लाहसित डराउँछ उनले त्यसका कार्यहरूको नराम्रो (परिणाम) लाई मेटाउँछन् तथा त्यसको प्रतिदानलाई वृद्धि गर्छन् ।

أَسْكِنُوهُنَّ مِنْ حَيْثُ سَكَنتُم مِّن وُجْدِكُمْ وَلَا تُضَارُّوهُنَّ لِتُضَيِّقُوا عَلَيْهِنَّ ۚ وَإِن كُنَّ أُولَاتِ حَمْلٍ فَأَنفِقُوا عَلَيْهِنَّ حَتَّىٰ يَضَعْنَ حَمْلَهُنَّ ۚ فَإِنْ أَرْضَعْنَ لَكُمْ فَآتُوهُنَّ أُجُورَهُنَّ ۖ وَأْتَمِرُوا بَيْنَكُم بِمَعْرُوفٍ ۖ وَإِن تَعَاسَرْتُمْ فَسَتُرْضِعُ لَهُ أُخْرَىٰ ﴿٦﴾

७. तिनीहरूलाई (त्यस निर्धारित म्यादभरी) आफ्नो (यथोचित) क्षमतानुसार त्यही घरमा राख जहाँ तिमीहरू रहन्छौ, तथा तिनीहरूलाई अप्ठ्यारोमा पार्नका निम्ति तिनीहरूलाई कष्ट दिने नगर । तथा यदि तिनीहरू गर्भवती रहेमा तिनीहरूले आफ्नो बोझ नउतारुन्जेलसम्म तिनीहरूमाथि खर्च गर । तथा यदि तिनीहरूले तिमीहरूका निम्ति (बच्चाहरूलाई) दूध ख्वाएमा, तिनीहरूलाई उचित पारितोषिक प्रदान गर, तथा परस्पर

न्यायोचित रूपमा परामर्श गरी आफ्ना मामिलाको निर्णय गर, परन्तु यदि परस्पर सहमत हुन नसकेमा, कुनै अर्कै (महिला) ले उसको (बाबुको) निम्ति (शिशुलाई) दूध ख्वाओस् ।

لِيُنْفِقْ ذُوْ سَعَةٍ مِّنْ سَعَتِهٖ ۚ وَمَنْ قُدِرَ عَلَيْهِ رِزْقُهٗ فَلْيُنْفِقْ مِمَّآ اٰتٰىهُ اللّٰهُ ۚ لَا يُكَلِّفُ اللّٰهُ نَفْسًا اِلَّا مَآ اٰتٰىهَا ۚ سَيَجْعَلُ اللّٰهُ بَعْدَ عُسْرٍ يُّسْرًا ﴿٨﴾

८. धनसम्पन्न व्यक्तिले आफ्नो क्षमतानुसार नै खर्च गरोस् । तथा जसको जीविकाको साधन सीमित रहेको छ त्यसले आफ्ना अल्लाहप्रदत्त वस्तुहरूबाट खर्च गरोस् । अल्लाहले कुनै व्यक्तिमाथि त्यसलाई प्राप्त क्षमताभन्दा अधिक बोझ हाल्दैनन् । अल्लाहले शीघ्र नै सङ्कटपछि सुविधाको साधन उत्पन्न गरिदिनेछन् ।

وَكَاَيِّنْ مِّنْ قَرْيَةٍ عَتَتْ عَنْ اَمْرِ رَبِّهَا وَرُسُلِهٖ فَحَاسَبْنٰهَا حِسَابًا شَدِيْدًا ۙ وَّعَذَّبْنٰهَا عَذَابًا نُّكْرًا ﴿٩﴾

९. कति नै यस्ता नगरहरू थिए जसले आफ्ना प्रभु र उनका सन्देशवाहकहरूको आदेशविरुद्ध विद्रोह गरे, तथा हामीले तिनीहरूसित कठोर हिसाब लियौं, तथा भयानक दण्डद्वारा तिनीहरूलाई सजाय दियौं

فَذَاقَتْ وَبَالَ اَمْرِهَا وَكَانَ عَاقِبَةُ اَمْرِهَا خُسْرًا ﴿١٠﴾

१०. अत: तिनीहरूले आफ्नो व्यवहारको (निकृष्ट) परिणाम चाखे, तथा तिनीहरूको लागि सर्वनाशबाहेक केही थिएन ।

اَعَدَّ اللّٰهُ لَهُمْ عَذَابًا شَدِيْدًا ۙ فَاتَّقُوا اللّٰهَ يٰٓاُولِى الْاَلْبَابِ ۛ الَّذِيْنَ اٰمَنُوْا ۛ قَدْ اَنْزَلَ اللّٰهُ اِلَيْكُمْ ذِكْرًا ﴿١١﴾

११. अल्लाहले तिनीहरूका निम्ति कठोर दण्ड तयार पारेर राखेका छन्, अत: हे विश्वासीहरूमध्ये बुद्धिमान व्यक्तिहरू हो, अल्लाहसित डराऊ । अल्लाहले निस्सन्देह तिमीहरूतर्फ एकजना उपदेशक अवतीर्ण गरेका छन्–

رَّسُوْلًا يَّتْلُوْا عَلَيْكُمْ اٰيٰتِ اللّٰهِ مُبَيِّنٰتٍ لِّيُخْرِجَ الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ مِنَ الظُّلُمٰتِ اِلَى النُّوْرِ ۗ وَمَنْ يُّؤْمِنْ بِاللّٰهِ وَيَعْمَلْ صَالِحًا يُّدْخِلْهُ جَنّٰتٍ

१२. एकजना (यस्ता) सन्देशवाहक, जसले तिमीहरूलाई अल्लाहका स्पष्ट निर्देशनहरू पाठ गरेर सुनाउँछन्, ताकि उनले विश्वास गर्ने र पुण्य कार्य गर्ने व्यक्तिहरूलाई सबै (प्रकारका) अन्धकारबाट निकालेर प्रकाशतर्फ लैजाउन् । तथा जसले अल्लाहप्रति विश्वास

تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ خٰلِدِيْنَ فِيْهَآ اَبَدًا ۭ قَدْ اَحْسَنَ اللّٰهُ لَهٗ رِزْقًا ⑪

गर्छ र पुण्यकार्य गर्छ– उनले त्यस्तो व्यक्तिलाई यस्ता बगैंचाहरूमा सदा बसोबास गर्न दाखिल गर्नेछन् जसमनि नहरहरू बग्ने गर्छन् । त्यस्ता व्यक्तिका निम्ति अल्लाहले अत्युत्तम जीविकाको व्यवस्था गरेका छन् ।

اَللّٰهُ الَّذِيْ خَلَقَ سَبْعَ سَمٰوٰتٍ وَّمِنَ الْاَرْضِ مِثْلَهُنَّ ۭ يَتَنَزَّلُ الْاَمْرُ بَيْنَهُنَّ لِتَعْلَمُوْٓا اَنَّ اللّٰهَ عَلٰي كُلِّ شَيْءٍ قَدِيْرٌ ڏ وَّاَنَّ اللّٰهَ قَدْ اَحَاطَ بِكُلِّ شَيْءٍ عِلْمًا ⑫

१३. अल्लाह उनै हुन् जसले सातवटा आकाशहरू, तथा त्यहीअनुसार पृथ्वी सृष्टि गरे । तिनीहरूका बीचमा (उनको) आदेश अवतीर्ण हुने गर्छ, ताकि अल्लाह सम्पूर्ण वस्तुहरूमाथि पूर्ण सामर्थ्यवान रहेका छन्, तथा सम्पूर्ण वस्तुहरूलाई अल्लाहले (आफ्नो) ज्ञान अन्तर्गत गरेका छन् भनी तिमीहरू जान्न सक ।

سُوْرَةُ التَّحْرِيْمِ مَدَنِيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ ثَلٰثَ عَشْرَةَ اٰيَةً وَّرُكُوْعَانِ

अल्–ताहरीम
(हिजरतपछि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

يٰۤاَيُّهَا النَّبِيُّ لِمَ تُحَرِّمُ مَاۤ اَحَلَّ اللّٰهُ لَكَ ۚ تَبْتَغِيْ مَرْضَاتَ اَزْوَاجِكَ ؕ وَاللّٰهُ غَفُوْرٌ رَّحِيْمٌ ①

२. हे नबी ! आफ्ना पत्नीहरूको प्रसन्नताका निम्ति अल्लाहले तिम्रा निम्ति वैध तुल्याएको वस्तुलाई तिमी किन (आफुमाथि) अवैध गर्छौ? तथा अल्लाह परम क्षमाशील, परम करुणाशील छन् ।

قَدْ فَرَضَ اللّٰهُ لَكُمْ تَحِلَّةَ اَيْمَانِكُمْ ۚ وَاللّٰهُ مَوْلٰىكُمْ ۚ وَهُوَ الْعَلِيْمُ الْحَكِيْمُ ②

३. अल्लाहले निस्सन्देह (पूर्वकथित) शपथहरूका सम्बन्धमा) तिमीहरूलाई अनिवार्यरूपमा आफ्नो (व्यर्थ) शपथ खोल्ने आदेश दिएका छन्, तथा अल्लाह तिमीहरूका सरंक्षक हुन्, तथा उनी सर्वज्ञ, तत्वज्ञ छन्

وَاِذْ اَسَرَّ النَّبِيُّ اِلٰى بَعْضِ اَزْوَاجِهٖ حَدِيْثًا ۚ فَلَمَّا نَبَّاَتْ بِهٖ وَاَظْهَرَهُ اللّٰهُ عَلَيْهِ عَرَّفَ بَعْضَهٗ وَاَعْرَضَ عَنْۢ بَعْضٍ ۚ فَلَمَّا نَبَّاَهَا بِهٖ قَالَتْ مَنْ اَنْۢبَاَكَ هٰذَا ؕ قَالَ نَبَّاَنِيَ الْعَلِيْمُ الْخَبِيْرُ ③

४. तथा जब नबीले आफ्ना पत्नीहरूमध्ये एउटीसित एउटा गोपनीय कुरो गरे, तथा जब त्यसपछि तिनले त्यो कुरो खोलिन्, तब अल्लाहले त्यसबारे उनलाई अवगत गराए, उनले त्यसको एकांश (तिनीसमक्ष) प्रकट गरे, तथा (त्यसको) अर्को अंशको (उल्लेख) भने गरेनन् । तथा जब उनले तिनलाई यस कुराको सूचना दिए, तिनले भनिन्, "तिमीलाई यसको जानकारी कसले दियो?" उनले भने, "उनै सर्वज्ञाता, सर्वसजग (अल्लाहले) मलाई यसबारे बताए ।"

اِنْ تَتُوْبَاۤ اِلَى اللّٰهِ فَقَدْ صَغَتْ قُلُوْبُكُمَا ۚ وَاِنْ تَظٰهَرَا عَلَيْهِ فَاِنَّ اللّٰهَ هُوَ مَوْلٰىهُ وَجِبْرِيْلُ وَصَالِحُ الْمُؤْمِنِيْنَ ۚ وَالْمَلٰٓئِكَةُ بَعْدَ ذٰلِكَ ظَهِيْرٌ ④

५. (अब) यदि तिमीहरू दुबै प्रायश्चित गर्दै अल्लाहसमक्ष झुक्यौ भने (त्यो तिमीहरूका) निम्ति उत्तम हुनेछ), तथा तिमीहरूको हृदय भने (पहिला नै) त्यसतर्फ झुकिसकेको छ । परन्तु यदि तिमीहरूले

उनीविरुद्ध परस्पर एक-अर्काको समर्थन गर्यौ भने, निश्चय नै अल्लाह उनका सहयोगी रहेका छन् तथा जिब्राइल तथा विश्वासीहरूमध्ये धर्मनिष्ठ व्यक्तिहरू पनि, तथा त्यसोपरान्त, (अन्य सम्पूर्ण) देवदूतहरू (समेत उनका) सहयोगी रहेका छन् ।

عَسٰی رَبُّهٗۤ اِنۡ طَلَّقَکُنَّ اَنۡ یُّبۡدِلَهٗۤ اَزۡوَاجًا خَیۡرًا مِّنۡکُنَّ مُسۡلِمٰتٍ مُّؤۡمِنٰتٍ قٰنِتٰتٍ تٰٓئِبٰتٍ عٰبِدٰتٍ سٰٓئِحٰتٍ ثَیِّبٰتٍ وَّ اَبۡکَارًا ﴿۵﴾

६. यदि उनले तिमीहरूलाई तलाक (पारपाचुके) दिए भने, अति सम्भव छ, उनका प्रतिपालकले उनलाई तिमीहरूका स्थानमा तिमीहरूभन्दा उत्तम – उत्सर्गी, विश्वासी, आज्ञाकारी, सदा अल्लाहतर्फ झुक्ने, उपासनामा व्यस्त रहने, व्रतधारी, विधवा र कुमारी दुबै प्रकारका पत्नीहरू प्रदान गर्नेछन् ।

یٰۤاَیُّهَا الَّذِیۡنَ اٰمَنُوۡا قُوۡۤا اَنۡفُسَکُمۡ وَ اَهۡلِیۡکُمۡ نَارًا وَّقُوۡدُهَا النَّاسُ وَ الۡحِجَارَۃُ عَلَیۡهَا مَلٰٓئِکَۃٌ غِلَاظٌ شِدَادٌ لَّا یَعۡصُوۡنَ اللّٰهَ مَاۤ اَمَرَهُمۡ وَ یَفۡعَلُوۡنَ مَا یُؤۡمَرُوۡنَ ﴿۶﴾

७. हे विश्वासीजन हो ! तिमीहरू स्वयम्लाई र आफ्ना परिवारलाई त्यस अग्निबाट बचाऊ जसको इन्धन मानिसहरू तथा ढुङ्गाहरू रहेका छन्, त्यसमाथि यस्ता कठोर (र) कर्मनिष्ठ देवदूतहरू नियुक्त छन्, जसले अल्लाहको आज्ञा उल्लङ्घन गर्दैनन् तथा तिनीहरूलाई जे आदेश दिइन्छ त्यसैको पालना गर्छन् ।

یٰۤاَیُّهَا الَّذِیۡنَ کَفَرُوۡا لَا تَعۡتَذِرُوا الۡیَوۡمَ ؕ اِنَّمَا تُجۡزَوۡنَ مَا کُنۡتُمۡ تَعۡمَلُوۡنَ ﴿۷﴾ ع ١٩

८. हे अविश्वासीहरू हो ! आज तिमीहरू उजुर नगर । तिमीहरूलाई आफूले गरेका कार्यहरूअनुसार नै प्रतिदान मिल्नेछ ।

یٰۤاَیُّهَا الَّذِیۡنَ اٰمَنُوۡا تُوۡبُوۡۤا اِلَی اللّٰهِ تَوۡبَۃً نَّصُوۡحًا ؕ عَسٰی رَبُّکُمۡ اَنۡ یُّکَفِّرَ عَنۡکُمۡ سَیِّاٰتِکُمۡ وَ یُدۡخِلَکُمۡ جَنّٰتٍ تَجۡرِیۡ مِنۡ تَحۡتِهَا الۡاَنۡهٰرُ ۙ یَوۡمَ لَا یُخۡزِی اللّٰهُ النَّبِیَّ وَ الَّذِیۡنَ اٰمَنُوۡا مَعَهٗ ۚ نُوۡرُهُمۡ

९. हे विश्वासीजन हो ! साँचो प्रायश्चितका साथ अल्लाहतर्फ झुक । सम्भवतः तिमीहरूका प्रतिपालकले त्यस दिन तिमीहरूका कार्यहरूको नराम्रो (परिणाम) मेटाउनेछन् तथा तिमीहरूलाई यस्ता बगैंचाहरूमा दाखिल गर्नेछन्

يَسْعٰى بَيْنَ اَيْدِيْهِمْ وَ بِاَيْمَانِهِمْ يَقُوْلُوْنَ رَبَّنَآ اَتْمِمْ لَنَا نُوْرَنَا وَ اغْفِرْ لَنَا ۚ اِنَّكَ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ۞

जसमनि नहरहरू बग्ने गर्छन्, जुन दिन अल्लाहले नबी तथा उनीसित विश्वास स्थापना गरेका व्यक्तिहरूलाई अपमानित गर्नेछैनन् । तिनीहरूको ज्योति तिनीहरूका अघिअघि तथा दाहिनेतर्फ दगुर्नेछ । तिनीहरूले भन्नेछन्, "हे हाम्रा प्रतिपालक, हाम्रा निम्ति हाम्रो ज्योतिलाई पूर्णता प्रदान गर तथा हामीलाई क्षमा प्रदान गर, निश्चय नै, सम्पूर्ण वस्तुहरूमाथि तिमी पूर्ण सामर्थ्यवान छौ ।"

يٰۤاَيُّهَا النَّبِيُّ جَاهِدِ الْكُفَّارَ وَ الْمُنٰفِقِيْنَ وَاغْلُظْ عَلَيْهِمْ ۚ وَ مَاْوٰىهُمْ جَهَنَّمُ ۚ وَ بِئْسَ الْمَصِيْرُ ۞

१०. हे नबी (सिद्ध पुरुष) ! अविश्वासी र ढोँगी मानिसहरूविरुद्ध कठोर सङ्घर्ष गर, तथा तिनीहरूविरुद्ध कठोर (दृढ) रहने गर । नर्क नै तिनीहरूको ठेगाना रहेको छ, तथा त्यो अति नै निकृष्ट गन्तव्यस्थान रहेको छ

ضَرَبَ اللّٰهُ مَثَلًا لِّلَّذِيْنَ كَفَرُوا امْرَاَتَ نُوْحٍ وَّ امْرَاَتَ لُوْطٍ ۚ كَانَتَا تَحْتَ عَبْدَيْنِ مِنْ عِبَادِنَا صَالِحَيْنِ فَخَانَتٰهُمَا فَلَمْ يُغْنِيَا عَنْهُمَا مِنَ اللّٰهِ شَيْـًٔا وَّ قِيْلَ ادْخُلَا النَّارَ مَعَ الدّٰخِلِيْنَ ۞

११. अल्लाहले अविश्वासी व्यक्तिहरूका निम्ति नूहकी पत्नी र लूतकी पत्नीको उदाहरण वर्णन गर्छन् । तिनीहरू हाम्रा दुईजना धर्मनिष्ठ सेवकहरूका अन्तर्गत थिए, परन्तु तिनीहरूले उनीहरूसित विश्वासघातपूर्ण व्यवहार गरे । अत: उनीहरूले अल्लाहविरुद्ध तिनीहरूलाई केही लाभ पुर्‍याउन सकेनन्, तथा (तिनीहरूलाई के) भनियो (भने), "तिमीहरू दुबैजना अग्निमा प्रवेश गर्ने व्यक्तिहरूसितै त्यसमा प्रवेश गर ।"

وَ ضَرَبَ اللّٰهُ مَثَلًا لِّلَّذِيْنَ اٰمَنُوا امْرَاَتَ فِرْعَوْنَ ۘ اِذْ قَالَتْ رَبِّ ابْنِ لِيْ عِنْدَكَ بَيْتًا فِي الْجَنَّةِ وَ نَجِّنِيْ مِنْ فِرْعَوْنَ وَ عَمَلِهٖ وَ نَجِّنِيْ مِنَ الْقَوْمِ الظّٰلِمِيْنَ ۞

१२. तथा अल्लाहले विश्वासीजनका निम्ति फिरौनकी पत्नीको उदाहरण वर्णन गर्छन्, जब तिनले भनिन्, "हे मेरा प्रतिपालक ! मेरा निम्ति आफ्ना जुनाफमा बगैंचाभित्र एउटा घर निर्माण गर तथा मलाई फिरौन र उसको कुकर्मबाट बचाऊ, तथा अत्याचारी व्यक्तिहरूबाट मलाई बचाऊ ।"

१२. तथा इम्रानकी पुत्री मरियमको (उदाहरण वर्णन गर्छन्), जसले आफ्ना गुप्ताङ्गहरूको सुरक्षा गरेकी थिइन्– अतः हामीले तिनीभित्र आफ्नो पवित्र आत्माबाट केही निश्वास गर्‍यौं– तथा उनले आफ्ना प्रतिपालकका वाणीहरू र उनका पुस्तकहरूलाई सत्य प्रमाणित गरिन् तथा तिनी आज्ञाकारीहरूमध्ये एक थिइन् ।

وَمَرْيَمَ ابْنَتَ عِمْرٰنَ الَّتِيْٓ اَحْصَنَتْ فَرْجَهَا فَنَفَخْنَا فِيْهِ مِنْ رُّوْحِنَا وَصَدَّقَتْ بِكَلِمٰتِ رَبِّهَا وَكُتُبِهٖ وَكَانَتْ مِنَ الْقٰنِتِيْنَ ﴿١٢﴾

سُوْرَةُ الْمُلْكِ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ اِحْدٰى وَّثَلٰثُوْنَ اٰيَةً وَّرُكُوْعَانِ

## अल्-मुल्क
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ﴿١﴾

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

تَبٰرَكَ الَّذِيْ بِيَدِهِ الْمُلْكُ ز وَهُوَ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرُ ﴿٢﴾

२. जसको हातमा राज्य छ ती अति नै मङ्गलमय छन्, तथा सम्पूर्ण वस्तुहरूमाथि उनी पूर्ण सामर्थ्यवान छन् ,

الَّذِيْ خَلَقَ الْمَوْتَ وَالْحَيٰوةَ لِيَبْلُوَكُمْ اَيُّكُمْ اَحْسَنُ عَمَلًا ؕ وَهُوَ الْعَزِيْزُ الْغَفُوْرُ ﴿٣﴾

३. उनले मृत्यु र जीवन सृष्टि गरे ताकि तिमीहरूमध्ये कोचाहिँ उत्तम कर्म गर्ने व्यक्ति रहेको छ भनी उनले तिमीहरूलाई जाँच्न सकून्, तथा उनी परम पराक्रमी, परम क्षमाशील छन्,

الَّذِيْ خَلَقَ سَبْعَ سَمٰوٰتٍ طِبَاقًا ؕ مَا تَرٰى فِيْ خَلْقِ الرَّحْمٰنِ مِنْ تَفٰوُتٍ ؕ فَارْجِعِ الْبَصَرَ ۙ هَلْ تَرٰى مِنْ فُطُوْرٍ ﴿٤﴾

४. जसले क्रमवद्धरूपमा सातवटा आकाशमण्डल सृष्टि गरेका छन् । कृपालु (अल्लाह) को सृष्टिमा तिमीले कुनै त्रुटी देख्न पाउँदैनौ । अतः पुनः तिमी ध्यानपूर्वक हेर, के तिमीले कुनै त्रुटी देख्छौं?

ثُمَّ ارْجِعِ الْبَصَرَ كَرَّتَيْنِ يَنْقَلِبْ اِلَيْكَ الْبَصَرُ خَاسِئًا وَّهُوَ حَسِيْرٌ ﴿٥﴾

५. सुन, तिमी बारम्बार दृष्टि गर, तिम्रो दृष्टि अन्तमा निराश र थकित भएर तिमीतर्फै फर्केर आउनेछ ।

وَلَقَدْ زَيَّنَّا السَّمَآءَ الدُّنْيَا بِمَصَابِيْحَ وَجَعَلْنٰهَا رُجُوْمًا لِّلشَّيٰطِيْنِ وَاَعْتَدْنَا لَهُمْ عَذَابَ السَّعِيْرِ ﴿٦﴾

६. तथा हामीले तल्लो आकाशलाई दीपहरूद्वारा सुसज्जित तुल्याएका छौं, तथा हामीले तिनीहरूलाई सैतानलाई धुत्कारने साधनस्वरूप बनाएका छौं, तथा हामीले तिनीहरूका निम्ति प्रज्वलित अग्निको दण्ड तयार पारेका छौं ।

وَلِلَّذِيْنَ كَفَرُوْا بِرَبِّهِمْ عَذَابُ جَهَنَّمَ ؕ وَبِئْسَ الْمَصِيْرُ ﴿٧﴾

७. तथा जसले आफ्ना प्रतिपालकप्रति अविश्वास गर्छन् तिनीहरूलाई नर्कको दण्ड मिल्नेछ, तथा त्यो अति निकृष्ट आश्रय

रहेको छ ।

إِذَآ أُلْقُوا۟ فِيهَا سَمِعُوا۟ لَهَا شَهِيقًا وَهِىَ تَفُورُ ﴿٧﴾

८. जब तिनीहरूलाई त्यसभित्र हालिनेछ, तब तिनीहरूले त्यसको गर्जन सुन्नेछन्, साथै त्यो उम्लिरहेको हुनेछ ।

تَكَادُ تَمَيَّزُ مِنَ ٱلْغَيْظِ ۖ كُلَّمَآ أُلْقِىَ فِيهَا فَوْجٌ سَأَلَهُمْ خَزَنَتُهَآ أَلَمْ يَأْتِكُمْ نَذِيرٌ ﴿٨﴾

९. कोधले गर्दा त्यो विष्फोटप्राय हुनेछ । जब जब त्यसमा (अविश्वासीहरूको) कुनै जमात हालिनेछ, त्यहाँका पालेहरूले तिनीहरूलाई सोध्नेछन्, "के तिमीहरूसमक्ष कुनै सावधानकर्ता आएका थिएनन्?"

قَالُوا۟ بَلَىٰ قَدْ جَآءَنَا نَذِيرٌ فَكَذَّبْنَا وَقُلْنَا مَا نَزَّلَ ٱللَّهُ مِن شَىْءٍ إِنْ أَنتُمْ إِلَّا فِى ضَلَٰلٍ كَبِيرٍ ﴿٩﴾

१०. तिनीहरूले भन्नेछन्, "हो, निस्सन्देह, एकजना सावधानकर्ता हामीसमक्ष आएका थिए, परन्तु हामीले (उनीसित) मिथ्यावादी व्यक्तिसरह व्यवहार गऱ्यौं, तथा हामीले (के) भन्यौं (भने), "अल्लाहले केही अवतीर्ण गरेका छैनन्, तिमीहरू ता स्पष्ट पथभ्रष्ट हुन पुगेका छौ ।"

وَقَالُوا۟ لَوْ كُنَّا نَسْمَعُ أَوْ نَعْقِلُ مَا كُنَّا فِىٓ أَصْحَٰبِ ٱلسَّعِيرِ ﴿١٠﴾

११. तथा तिनीहरूले (के पनि) भन्नेछन् (भने), "यदि हामीले सुनेका भए अथवा हामी बुद्धिमान रहेका भए, हामी प्रज्वलित अग्निमा रहने व्यक्तिहरूमध्ये हुने थिएनौं ।"

فَٱعْتَرَفُوا۟ بِذَنۢبِهِمْ فَسُحْقًا لِّأَصْحَٰبِ ٱلسَّعِيرِ ﴿١١﴾

१२. अतः तिनीहरूले आफ्नो पाप स्वीकार्ने छन्, परन्तु प्रज्वलित अग्निका निवासीहरूका निम्ति धुत्कार (स्थायी दण्ड) रहेको छ ।

إِنَّ ٱلَّذِينَ يَخْشَوْنَ رَبَّهُم بِٱلْغَيْبِ لَهُم مَّغْفِرَةٌ وَأَجْرٌ كَبِيرٌ ﴿١٢﴾

१३. वस्तुतः, जुन व्यक्तिहरू आफ्ना प्रतिपालकसित (तिनीहरूबाट) उनी गुप्त रहेको अवस्थामा डराउँछन्– तिनीहरूलाई क्षमादान तथा ठूलो प्रतिदान प्राप्त हुनेछ ।

وَأَسِرُّوا۟ قَوْلَكُمْ أَوِ ٱجْهَرُوا۟ بِهِۦٓ ۖ إِنَّهُۥ عَلِيمٌۢ بِذَاتِ ٱلصُّدُورِ ﴿١٣﴾

१४. तिमीहरूले आफ्नो कुरो चाहे गुप्त राख अथवा चाहे त्यसलाई प्रकट गर, उनले (तिमीहरूको) छातीभित्रको कुरालाई

(समेत) अति राम्ररी जान्दछन् ।

१५. जसले (तिमीहरूलाई) सृष्टि गरे के उनले (ती कुराहरू) जान्दैनन् त? उनी सम्पूर्ण प्रकारका भेदहरूका ज्ञाता, सर्वविदित छन् ।

أَلَا يَعْلَمُ مَنْ خَلَقَ ۚ وَهُوَ اللَّطِيفُ الْخَبِيرُ ﴿١٥﴾

१६. ती उनी नै हुन्, जसले पृथ्वीलाई तिमीहरूको अधीनस्थ बनाएका छन्, अतः, त्यसका पार्श्वहरूमा परिभ्रमण गर, तथा उनको खाद्यान्नबाट खाद्य ग्रहण गर । तथा उनीतर्फै (सबैको) पुनरुत्थान हुनेछ ।

هُوَ الَّذِي جَعَلَ لَكُمُ الْأَرْضَ ذَلُولًا فَامْشُوا فِي مَنَاكِبِهَا وَكُلُوا مِنْ رِزْقِهِ ۖ وَإِلَيْهِ النُّشُورُ ﴿١٦﴾

१७. के तिमीहरू ती आकाशमा रहेका शक्तिबाट स्वयम्लाई सुरक्षित अनुभव गर्छौ, र उनले पृथ्वीलाई तिमीहरूसहित धँसाउनेछैनन् भन्ने ठान्छौ? अतः हेर ! त्यो ता डगमगाउन लागिरहेछ !

ءَأَمِنْتُمْ مَنْ فِي السَّمَاءِ أَنْ يَخْسِفَ بِكُمُ الْأَرْضَ فَإِذَا هِيَ تَمُورُ ﴿١٧﴾

१८. के तिमीहरू ती आकाशमा रहेका शक्तिबाट उनले तिमीहरूविरुद्ध धुलो बालुवायुक्त आँधी चलाउनेछैनन् भन्ने कुरामा स्वयम्लाई सुरक्षित अनुभव गर्छौ? तब मेरो चेतावनी कस्तो (डरलाग्दो) थियो भनी तिमीहरूलाई ज्ञात हुनेछ ।

أَمْ أَمِنْتُمْ مَنْ فِي السَّمَاءِ أَنْ يُرْسِلَ عَلَيْكُمْ حَاصِبًا ۖ فَسَتَعْلَمُونَ كَيْفَ نَذِيرِ ﴿١٨﴾

१९. तथा तिनीहरूभन्दा अघिका मानिसहरूले पनि (मेरा सन्देशवाहक हरूसित) मिथ्यावादी व्यक्तिहरूसरह व्यवहार गरेका थिए, अतः मेरो दण्ड कस्तो (कठोर) थियो त?

وَلَقَدْ كَذَّبَ الَّذِينَ مِنْ قَبْلِهِمْ فَكَيْفَ كَانَ نَكِيرِ ﴿١٩﴾

२०. के तिनीहरूले आफ्ना टाउका माथि ती पखेटा फैलाएका पंक्षीहरू कहिले (तिनीहरूलाई) नफैलाई र कहिले तिनीहरूलाई फैलाउँदै (चारोमाथि झम्टदै तल ओर्लेको) देखेका छैनन् र? परम कृपालु (अल्लाह)ले नै तिनीहरूलाई रोकेर

أَوَلَمْ يَرَوْا إِلَى الطَّيْرِ فَوْقَهُمْ صَافَّاتٍ وَيَقْبِضْنَ ۚ مَا يُمْسِكُهُنَّ إِلَّا الرَّحْمَٰنُ ۚ إِنَّهُ بِكُلِّ شَيْءٍ بَصِيرٌ ﴿٢٠﴾

राख्ने गर्छन् । वस्तुतः उनी सम्पूर्ण वस्तुहरूलाई देखिरहेछन् ।

२१. अथवा परम कृपालु (अल्लाह)विरुद्ध तिमीहरूको सहयोग गर्न को तिमीहरूको सेना बन्न सक्छ र? अविश्वासी व्यक्तिहरू केवल धोकाग्रस्त रहेका छन् ।

أَمَّنْ هَٰذَا الَّذِي هُوَ جُندٌ لَّكُمْ يَنصُرُكُم مِّن دُونِ الرَّحْمَٰنِ ۚ إِنِ الْكَافِرُونَ إِلَّا فِي غُرُورٍ ﴿٢٠﴾

२२. अथवा उनले यदि आफ्नो खाद्यान्न रोकिदिएमा तिमीहरूलाई कसले जीविका प्रदान गर्न सक्छ र? होइन, (अपितु), तिनीहरू विद्रोह र (सत्य)विपरित (कार्यहरू)मा हठपूर्वक अघि बढेका छन् ।

أَمَّنْ هَٰذَا الَّذِي يَرْزُقُكُمْ إِنْ أَمْسَكَ رِزْقَهُ ۚ بَل لَّجُّوا فِي عُتُوٍّ وَنُفُورٍ ﴿٢١﴾

२३. के ! जो व्यक्ति आफ्नो टाउकोले घिस्रिदै हिड्छ त्यो अधिक सन्मार्ग प्राप्त रहेको छ अथवा त्यो व्यक्ति, जो सीधा भएर सन्मार्गमा हिँड्ने गर्छ?

أَفَمَن يَمْشِي مُكِبًّا عَلَىٰ وَجْهِهِ أَهْدَىٰ أَمَّن يَمْشِي سَوِيًّا عَلَىٰ صِرَاطٍ مُّسْتَقِيمٍ ﴿٢٢﴾

२४. तिमी भन, "ती उनी नै हुन् जसले तिमीहरूलाई अस्तित्वमा ल्याए, तथा तिमीहरूका निम्ति कान र आँखा तथा हृदय बनाए, (परन्तु) तिमीहरू पटक्कै कृतज्ञता ज्ञापन गर्दैनौ ।"

قُلْ هُوَ الَّذِي أَنشَأَكُمْ وَجَعَلَ لَكُمُ السَّمْعَ وَالْأَبْصَارَ وَالْأَفْئِدَةَ ۖ قَلِيلًا مَّا تَشْكُرُونَ ﴿٢٣﴾

२५. तिमी भन, "ती उनी नै हुन्, जसले पृथ्वीमा तिमीहरूको सङ्ख्यामा वृद्धि गरे, तथा उनीतर्फै तिमीहरूलाई एकत्रित गरेर लगिनेछ ।"

قُلْ هُوَ الَّذِي ذَرَأَكُمْ فِي الْأَرْضِ وَإِلَيْهِ تُحْشَرُونَ ﴿٢٤﴾

२६. तथा तिनीहरू भन्छन्, "यदि तिमीहरू (वास्तवमै) साँचा हौ भने त्यो वचन कहिले (पूर्ण हुन्छ) त?"

وَيَقُولُونَ مَتَىٰ هَٰذَا الْوَعْدُ إِن كُنتُمْ صَادِقِينَ ﴿٢٥﴾

२७. तिमी भन, "(त्यसको) ज्ञान ता केवल अल्लाहलाई प्राप्त छ, तथा म ता केवल एउटा स्पष्ट रूपमा सावधान गर्ने व्यक्ति हुँ ।"

قُلْ إِنَّمَا الْعِلْمُ عِندَ اللَّهِ وَإِنَّمَا أَنَا نَذِيرٌ مُّبِينٌ ﴿٢٦﴾

فَلَمَّا رَاَوْهُ زُلْفَةً سِيْٓـَٔتْ وُجُوْهُ الَّذِيْنَ كَفَرُوْا وَقِيْلَ هٰذَا الَّذِيْ كُنْتُمْ بِهٖ تَدَّعُوْنَ ﴿٢٨﴾

२८. परन्तु जब तिनीहरूले त्यसलाई निकटमा देख्नेछन्, तब अविश्वासीहरूको मुहार क्लेशयुक्त हुन पुग्नेछ, तथा के भनिनेछ भने, "यही नै त्यो वस्तु हो जसको तिमीहरू माग गर्ने गर्थ्यौ ।"

قُلْ اَرَءَيْتُمْ اِنْ اَهْلَكَنِيَ اللّٰهُ وَمَنْ مَّعِيَ اَوْ رَحِمَنَا ۙ فَمَنْ يُّجِيْرُ الْكٰفِرِيْنَ مِنْ عَذَابٍ اَلِيْمٍ ﴿٢٩﴾

२९. तिमी भन, "तिमीहरू मलाई भन, यदि अल्लाहले मलाई र मेरा साथीहरूलाई विनाश गरेमा, अथवा हामीमाथि करुणा प्रदर्शन गरेमा, अविश्वासी मानिसहरूलाई पीडादायक दण्डबाट कसले बचाउला त?"

قُلْ هُوَ الرَّحْمٰنُ اٰمَنَّا بِهٖ وَعَلَيْهِ تَوَكَّلْنَا ۚ فَسَتَعْلَمُوْنَ مَنْ هُوَ فِيْ ضَلٰلٍ مُّبِيْنٍ ﴿٣٠﴾

३०. भन, "उनी नै परम कृपालु (अल्लाह) हुन्, उनीप्रति नै हामीले विश्वास गरेका छौं तथा उनीमाथि नै आफ्नो पूर्ण भरोसा राखेका छौं । तथा को चाहिं स्पष्ट पथभ्रष्ट रहेको छ भन्ने कुरा तिमीहरूले शीघ्र नै जान्नेछौ ।"

قُلْ اَرَءَيْتُمْ اِنْ اَصْبَحَ مَاۤؤُكُمْ غَوْرًا فَمَنْ يَّاْتِيْكُمْ بِمَاۤءٍ مَّعِيْنٍ ﴿٣١﴾ ع

३१. तिमी भन "तिमीहरू मलाई भन, यदि तिमीहरूको सम्पूर्ण पानी पातालमा विलय हुन पुगेमा, कसले तिमीहरूका निम्ति पवित्र बग्ने पानी ल्याउला त?"




## अल्-कलम
(हिजरतअघि अवतरित)

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

२. मसीदानी र कलम तथा तिनीहरूले (लेख)को लेखको शपथ,

نٓ وَالْقَلَمِ وَمَا يَسْطُرُوْنَ ②

३. तिमी आफ्ना प्रतिपालकको कृपाले कुनै पागल व्यक्ति रहेका छैनौ ।

مَآ اَنْتَ بِنِعْمَةِ رَبِّكَ بِمَجْنُوْنٍ ③

४. तथा तिमीलाई निश्चयपूर्वक कहिल्यै समाप्त नहुने प्रतिदान प्राप्त हुनेछ ।

وَاِنَّ لَكَ لَاَجْرًا غَيْرَ مَمْنُوْنٍ ④

५. तथा तिमी निश्चय नै अति उच्च चरित्रहरूका स्वामी रहेका छौ ।

وَاِنَّكَ لَعَلٰى خُلُقٍ عَظِيْمٍ ⑤

६. तथा तिमीले शीघ्र नै देख्नेछौ र तिनीहरूले (पनि) देख्नेछन् ।

فَسَتُبْصِرُ وَيُبْصِرُوْنَ ⑥

७. अर्थात् तिमीहरूमध्ये को चाहिँ (पागलपनले) पिडित रहेको छ ।

بِاَيِّكُمُ الْمَفْتُوْنُ ⑦

८. निश्चय नै, तिम्रा प्रतिपालकले उनको मार्गबाट विपथगामी भएका व्यक्तिहरूलाई राम्ररी जान्दछन्, तथा उनले मार्गदर्शनका अनुसरणकारीहरूलाई पनि राम्ररी जान्दछन् ।

اِنَّ رَبَّكَ هُوَ اَعْلَمُ بِمَنْ ضَلَّ عَنْ سَبِيْلِهٖ ۪ وَهُوَ اَعْلَمُ بِالْمُهْتَدِيْنَ ⑧

९. अतः जसले (सत्यलाई) अस्वीकार गर्छन् तिनीहरूका चाहनाहरूको समर्थन नगर ।

فَلَا تُطِعِ الْمُكَذِّبِيْنَ ⑨

१०. तिमीले नरमी देखाएमा तिनीहरूले (पनि) नरमी देखाउनेछन् भन्ने तिनीहरूको चाहना रहेको छ ।

وَدُّوْا لَوْ تُدْهِنُ فَيُدْهِنُوْنَ ⑩

وَلَا تُطِعْ كُلَّ حَلَّافٍ مَّهِيْنٍ ۝١١

११. तथा कुनै यस्तो लघु शपथ खाने व्यक्तिको समर्थन नगर,

هَمَّازٍ مَّشَّآءٍۭ بِنَمِيْمٍ ۝١٢

१२. जो चुकलीखोर, अपवाद लगाउनमा व्यस्त रहने गर्छ,

مَّنَّاعٍ لِّلْخَيْرِ مُعْتَدٍ اَثِيْمٍ ۝١٣

१३. पुण्यकार्यबाट रोक्ने, सिमोल्लङ्घनकारी तथा पापी,

عُتُلٍّۭ بَعْدَ ذٰلِكَ زَنِيْمٍ ۝١٤

१४. दुराचारी तथा त्यसमाथि शङ्कास्पद रूपमा जन्म लिएको व्यक्ति रहेको छ ।

اَنْ كَانَ ذَا مَالٍ وَّ بَنِيْنَ ۝١٥

१५. केवल अध्याधिक सम्पत्ति र सन्तानको स्वामी भएकै कारण ।

اِذَا تُتْلٰى عَلَيْهِ اٰيٰتُنَا قَالَ اَسَاطِيْرُ الْاَوَّلِيْنَ ۝١٦

१६. जब त्यससमक्ष हाम्रा निर्देशनहरू पाठ गरेर सुनाइन्छ, तब त्यो व्यक्ति के भन्छ भने, "यी ता अतीतकालका मानिसहरूका कथाहरू हुन् ।"

سَنَسِمُهٗ عَلَى الْخُرْطُوْمِ ۝١٧

१७. हामी त्यसको थुतुनोमा डामेर चिह्न लगाउनेछौं ।

اِنَّا بَلَوْنٰهُمْ كَمَا بَلَوْنَآ اَصْحٰبَ الْجَنَّةِ ۚ اِذْ اَقْسَمُوْا لَيَصْرِمُنَّهَا مُصْبِحِيْنَ ۝١٨

१८. हामी तिनीहरूलाई निश्चय नै त्यसरी नै जाँच्नेछौं जसरी हामीले ती बगैंचाका स्वामीहरूलाई त्यस अवस्थामा जाँचेका थियौं, जब तिनीहरूले परस्पर शपथ खाएर विहानिपख त्यसका (सम्पूर्ण फलहरू) तिनीहरूले अवश्य टिप्नेछन् भनी भनेका थिए,

وَلَا يَسْتَثْنُوْنَ ۝١٩

१९. तथा तिनीहरूले केही (अशुभ) होला भन्ने ठानेका थिएनन् (तथा "यदि अल्लाहको इच्छा भएमा" भनी तिनीहरूले भनेका थिएनन्) ।

فَطَافَ عَلَيْهَا طَآئِفٌ مِّنْ رَّبِّكَ وَهُمْ نَآئِمُوْنَ ۝٢٠

२०. त्यसपछि तिनीहरू सुतिरहेको अवस्थामा त्यसमा तिम्रा प्रतिपालकको

एउटा आगमन (दण्ड) आयो;

فَأَصْبَحَتْ كَالصَّرِيمِ

२१. तथा बिहान त्यसलाई (रातभरि) काटिएको (बगैंचा) सदृश पाइयो ।

فَتَنَادَوْا مُصْبِحِينَ

२२. अतः बिहान (सबेरै) तिनीहरूले परस्पर एक-अर्कालाई बोलाए,

أَنِ اغْدُوا عَلَىٰ حَرْثِكُمْ إِن كُنتُمْ صَارِمِينَ

२३. (तिनीहरूले) भने, “तिमीहरूले यदि बाली काट्ने नै हो भने बिहान बिहानै आफ्नो खेतमा जाऊ ।”

فَانطَلَقُوا وَهُمْ يَتَخَافَتُونَ

२४. तथा तिनीहरू परस्पर मधुरो स्वरमा वार्ता गर्दै (त्यसतर्फ) प्रस्थान गरे,

أَن لَّا يَدْخُلَنَّهَا الْيَوْمَ عَلَيْكُم مِّسْكِينٌ

२५. के भन्दै भने, “तिमीहरूको इच्छाविपरीत आज कुनै दरिद्र मानिस त्यसमा प्रवेश नगरोस् ।”

وَغَدَوْا عَلَىٰ حَرْدٍ قَادِرِينَ

२६. तथा पूर्ण शक्ति (र सावधानी) का साथ तिनीहरू बिहान बिहानै प्रस्थान गरे ।

فَلَمَّا رَأَوْهَا قَالُوا إِنَّا لَضَالُّونَ

२७. परन्तु जब तिनीहरूले त्यसलाई देखे, तिनीहरूले भने, “निश्चय नै हामीले (आफ्नो मार्ग) भुलेका छौं ।

بَلْ نَحْنُ مَحْرُومُونَ

२८. “होइन, (अपितु) सम्पूर्ण वस्तुहरूबाट हामी बञ्चित गरिएका छौं ।”

قَالَ أَوْسَطُهُمْ أَلَمْ أَقُل لَّكُمْ لَوْلَا تُسَبِّحُونَ

२९. तिनीहरूमध्येको (एउटा) भलो व्यक्तिले भन्यो, ““तिमीहरू (अल्लाहको) स्तुति किन गर्दैनौ” भनी मैले तिमीहरूलाई भनेको थिइँन र?”

قَالُوا سُبْحَانَ رَبِّنَا إِنَّا كُنَّا ظَالِمِينَ

३०. त्यसक्षण तिनीहरूले भने, “हाम्रा प्रतिपालक परम पवित्र छन् । निश्चय नै, हामी अत्याचारी थियौं।”

فَاَقْبَلَ بَعْضُهُمْ عَلٰى بَعْضٍ يَّتَلَاوَمُوْنَ ۝٣١

३१. त्यसपछि तिनीहरूमध्ये केही व्यक्तिहरू अन्य केही व्यक्तिहरूतर्फ फर्केर परस्पर दोषारोपण गर्न लागे ।

قَالُوْا يٰوَيْلَنَآ اِنَّا كُنَّا طٰغِيْنَ ۝٣٢

३२. तिनीहरूले भने, "हामीमाथि धिक्कार छ ! हामी वास्तवमा सीमोल्लङ्घनकारी थियौं ।

عَسٰى رَبُّنَآ اَنْ يُّبْدِلَنَا خَيْرًا مِّنْهَآ اِنَّآ اِلٰى رَبِّنَا رٰغِبُوْنَ ۝٣٣

३३. "सम्भवतः हाम्रा प्रतिपालकले हामीलाई त्यसको सट्टा त्योभन्दा (एउटा) उत्तम (बगैंचा) प्रदान गर्नेछन्; हामी अवश्य आफ्ना प्रतिपालकतर्फ नम्रताका साथ झुक्नेछौं ।"

كَذٰلِكَ الْعَذَابُ ۭ وَلَعَذَابُ الْاٰخِرَةِ اَكْبَرُ ۘ لَوْ كَانُوْا يَعْلَمُوْنَ ۝٣٤

३४. (यस संसारको) दण्ड यसै प्रकारको हुन्छ । तथा परलोकको दण्ड भने अवश्य त्योभन्दा ठूलो रहेको छ । यदि तिनीहरूले जानेका भए !

اِنَّ لِلْمُتَّقِيْنَ عِنْدَ رَبِّهِمْ جَنّٰتِ النَّعِيْمِ ۝٣٥

३५. धर्मनिष्ठ व्यक्तिहरूका निम्ति तिनीहरूका प्रतिपालकका जुनाफमा वैभवपूर्ण बगैंचाहरू रहेका छन् ।

اَفَنَجْعَلُ الْمُسْلِمِيْنَ كَالْمُجْرِمِيْنَ ۝٣٦

३६. अतः अपराधीसित (हामी) जस्तो (व्यवहार गर्छौं) त्यस्तै व्यवहार हामी (आफ्ना) आज्ञाकारी व्यक्तिहरूसित गर्नेछौं त?

مَا لَكُمْ ۣ كَيْفَ تَحْكُمُوْنَ ۝٣٧

३७. तिमीहरूलाई के भएको छ? तिमीहरू कस्तो निर्णय गर्छौ ।

اَمْ لَكُمْ كِتٰبٌ فِيْهِ تَدْرُسُوْنَ ۝٣٨

३८. के तिमीहरूसित कुनै पुस्तक छ जसमा तिमीहरू (यी कुरा) पढ्छौ,

اِنَّ لَكُمْ فِيْهِ لَمَا تَخَيَّرُوْنَ ۝٣٩

३९. अर्थात् तिमीहरूले जे इच्छा गर्छौ त्यही त्यहाँ पाउनेछौ?

اَمْ لَكُمْ اَيْمَانٌ عَلَيْنَا بَالِغَةٌ اِلٰى يَوْمِ الْقِيٰمَةِ ۙ اِنَّ لَكُمْ لَمَا تَحْكُمُوْنَ ۝٤٠

४०. अथवा तिमीहरूले जे माग्छौ त्यो सम्पूर्ण तिमीहरूलाई प्राप्त हुनेछ भनी पुनरुत्थानका दिनसम्मका निम्ति के

तिमीहरूले हामीसित कुनै अङ्गीकार लिएका छौ?

४१. त्यस कुराको तिनीहरूमध्ये को जिम्मेवार रहेको छ भनी तिनीहरूलाई सोध

سَلْهُمْ اَيُّهُمْ بِذٰلِكَ زَعِيْمٌ ﴿٤٠﴾

४२. के तिनीहरूसित (अल्लाहका) कुनै भागीदारहरू रहेका छन्? त्यसो भए, तिनीहरूले यदि साँचो बोलिरहेछन् भने आफ्ना (ती) भागीदारहरूलाई प्रस्तुत गरून्

اَمْ لَهُمْ شُرَكَآءُ فَلْيَاْتُوْا بِشُرَكَآئِهِمْ اِنْ كَانُوْا صٰدِقِيْنَ ﴿٤١﴾

४३. जुनदिन सत्य पूर्णरूपमा प्रकट गरिनेछ त्यसदिन तिनीहरूलाई साष्टाङ्ग प्रणाम गर्नका निम्ति बोलाइनेछ, परन्तु तिनीहरूले (त्यसो गर्न) सक्नेछैनन् ।

يَوْمَ يُكْشَفُ عَنْ سَاقٍ وَّ يُدْعَوْنَ اِلَى السُّجُوْدِ فَلَا يَسْتَطِيْعُوْنَ ﴿٤٢﴾

४४. तिनीहरूको दृष्टि निम्न हुनेछ, (तथा) तिनीहरूलाई कलङ्कले ढाक्नेछ; जब तिनीहरू स्वस्थ र निरोगी थिए, तिनीहरूलाई साष्टाङ्ग प्रणाम गर्नका निम्ति आह्वान गरिन्थ्यो (परन्तु तिनीहरू मान्दैनथे)

خَاشِعَةً اَبْصَارُهُمْ تَرْهَقُهُمْ ذِلَّةٌ وَقَدْ كَانُوْا يُدْعَوْنَ اِلَى السُّجُوْدِ وَهُمْ سَالِمُوْنَ ﴿٤٣﴾

४५. अत: मलाई र (हाम्रो) त्यस वाणीका अस्वीकारी व्यक्तिहरूलाई (एकान्तमा) छाडीदेउ । हामी तिनीहरूलाई बिस्तार बिस्तारै (विनाशतर्फ) त्यस दिशाबाट तान्नेछौ जुन दिशाको तिनीहरूलाई कुनै ज्ञान छैन ।

فَذَرْنِيْ وَمَنْ يُّكَذِّبُ بِهٰذَا الْحَدِيْثِ سَنَسْتَدْرِجُهُمْ مِّنْ حَيْثُ لَا يَعْلَمُوْنَ ﴿٤٤﴾

४६. तथा म तिनीहरूलाई अवसर दिनेछु, किनभने मेरो योजना अति दृढ रहेको छ ।

وَاُمْلِيْ لَهُمْ اِنَّ كَيْدِيْ مَتِيْنٌ ﴿٤٥﴾

४७. के तिमी तिनीहरूसित कुनै पारितोषिक माग्छौ जसको (अत्याधिक) करको बोझमनि तिनीहरू दबिरहेछन्?

اَمْ تَسْـَٔلُهُمْ اَجْرًا فَهُمْ مِّنْ مَّغْرَمٍ مُّثْقَلُوْنَ ﴿٤٦﴾

४८. के तिनीहरूसित अदृश्यको ज्ञान रहेको छ (जसलाई) तिनीहरू लिपिवद्ध गरेर

اَمْ عِنْدَهُمُ الْغَيْبُ فَهُمْ يَكْتُبُوْنَ ﴿٤٧﴾

राख्छन्?

फَاصْبِرْ لِحُكْمِ رَبِّكَ وَلَا تَكُنْ كَصَاحِبِ الْحُوتِ إِذْ نَادَىٰ وَهُوَ مَكْظُومٌ ﴿٤٩﴾

४९. अत: तिमी आफ्ना प्रतिपालकको आज्ञा (पालन) मा धैर्यता अवलम्बन गर तथा त्यो माछावाला (व्यक्ति)सदृश नबन, जब उसले दुखित भई (आफ्ना प्रतिपालकलाई) पुकारेको थियो ।

لَوْلَا أَنْ تَدَارَكَهُ نِعْمَةٌ مِنْ رَبِّهِ لَنُبِذَ بِالْعَرَاءِ وَهُوَ مَذْمُومٌ ﴿٥٠﴾

५०. यदि उसलाई आफ्ना प्रतिपालकको अनुग्रह प्राप्त नभएको भए, त्यसलाई अवश्य एउटा बाँझो मैदानमा फ्याँकिने थियो, फलस्वरूप त्यो व्यक्ति (आफ्ना मानिसहरूद्वारा) तिरस्कृत भइरहने थियो ।

فَاجْتَبَاهُ رَبُّهُ فَجَعَلَهُ مِنَ الصَّالِحِينَ ﴿٥١﴾

५१. परन्तु उसका प्रतिपालकले उसलाई चुने तथा उसलाई सत्यनिष्ठ व्यक्तिहरूमध्ये (एक) बनाए ।

وَإِنْ يَكَادُ الَّذِينَ كَفَرُوا لَيُزْلِقُونَكَ بِأَبْصَارِهِمْ لَمَّا سَمِعُوا الذِّكْرَ وَيَقُولُونَ إِنَّهُ لَمَجْنُونٌ ﴿٥٢﴾

५२. ती अविश्वासीहरूले जब उपदेश सुन्छन् सम्भवत: तिमीलाई (तिम्रो प्रतिपालकप्रदत्त स्थानबाट) तिनीहरूले आफ्नो (क्रोधपूर्ण) दृष्टिद्वारा विचलित तुल्याउने प्रयास गर्नेछन्; तथा तिनीहरू भन्छन्, "त्यो व्यक्ति निस्सन्देह पागल रहेको छ ।"

وَمَا هُوَ إِلَّا ذِكْرٌ لِلْعَالَمِينَ ﴿٥٣﴾

५३. होइन, (अपितु) त्यो ता सम्पूर्ण विश्व ब्रह्माण्डका निम्ति केवल एउटा उपदेश रहेको छ ।

سُوْرَةُ الْحَاقَّةِ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ ثَلٰثٌ وَّخَمْسُوْنَ اٰيَةً وَّرُكُوْعَانِ

## अल्-हाक्का:
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

اَلْحَآقَّةُ ②

२. अनिवार्य (घट्ने) घटना !

مَا الْحَآقَّةُ ③

३. त्यो अनिवार्य (घट्ने) घटना के हो?

وَمَآ اَدْرٰىكَ مَا الْحَآقَّةُ ④

४. तथा त्यो अनिवार्य (घट्ने) घटना के हो भनी तिमीलाई कसले अवगत गरायो?

كَذَّبَتْ ثَمُوْدُ وَعَادٌۢ بِالْقَارِعَةِ ⑤

५. समूद (जाति) र आद (जाति) ले त्यस (सर्वनाशकारी) सङ्कटलाई मान्न अस्वीकार गरेका थिए* ।

فَاَمَّا ثَمُوْدُ فَاُهْلِكُوْا بِالطَّاغِيَةِ ⑥

६. त्यसपछि समूद (जाति), तिनीहरूलाई भने एउटा भयानक विस्फोटले ध्वस्त पाऱ्यो ।

وَاَمَّا عَادٌ فَاُهْلِكُوْا بِرِيْحٍ صَرْصَرٍ عَاتِيَةٍ ⑦

७. तथा आद (जाति), तिनीहरू भने एउटा निरन्तर चल्ने प्रचण्ड आँधीबाट विनाश भए,

---

* टिप्पणी: यो वास्तवमा कुरानकै त्यस अभिव्यक्तिबाट लिइएको हो, जसमा अल्–कारिअ: ( اَلْقَارِعَة ) लाई १०१: ५–६ (अल्–कारिअ::) अर्थात् त्यसदिन जब मानिसहरू चौतर्फी छरिएका फट्याङ्ग्राहरू सदृश हुनेछन्, तथा पर्वतहरू धुनेको ऊनजस्ता हुनेछन्, भनी उल्लेख गरिएको छ ।

अत: यो कुनै साधारण विनाश होइन अपितु एउटा भयानक सङ्कटको उल्लेख रहेको छ- जस्तै हाइड्रोजन बमद्वारा अथवा न्यूट्रन बमद्वारा उत्पन्न हुने (महासङ्कट) इत्यादि । त्यस विस्फोटनको परिमाण (आयतन) लाई चूर्ण–चूर्ण भएका पर्वतहरू जस्तै हुन सक्छ भनी उल्लेख गरिएको छ ।

سَخَّرَهَا عَلَيْهِمْ سَبْعَ لَيَالٍ وَّثَمٰنِيَةَ اَيَّامٍ ۙ حُسُوْمًا ۙ فَتَرَى الْقَوْمَ فِيْهَا صَرْعٰى ۙ كَاَنَّهُمْ اَعْجَازُ نَخْلٍ خَاوِيَةٍ ۚ ﴿٧﴾

८. ज्सलाई उनले तिनीहरूविरुद्ध सात रात तथा आठ दिन तिनीहरूलाई काट्दै फ्याक्दै निरन्तर चलाएका थिए, अत: तिमीले त्यहाँका ती मानिसहरूलाई पूर्णत: ढलेका खजूरका जराहरूसदृश पृथ्वीमा घोप्टिएका अवस्थामा देख्छौ ।

فَهَلْ تَرٰى لَهُمْ مِّنْۢ بَاقِيَةٍ ﴿٨﴾

९. के तिमी त्यहाँ तिनीहरूको कुनै अवशेष देख्छौ?

وَجَآءَ فِرْعَوْنُ وَمَنْ قَبْلَهٗ وَالْمُؤْتَفِكٰتُ بِالْخَاطِئَةِ ۚ ﴿١٠﴾

१०. तथा फिरौन र त्यसअघिका मानिसहरू तथा घोप्टयाइएका नगरहरू(का निवासीहरू सबै हठपूर्वक) पापपूर्ण कार्यहरूमा व्यस्त थिए ।

فَعَصَوْا رَسُوْلَ رَبِّهِمْ فَاَخَذَهُمْ اَخْذَةً رَّابِيَةً ﴿١١﴾

११. तथा तिनीहरूले आफ्ना प्रतिपालकका सन्देशवाहकको अवज्ञा गरे, त्यसकारण उनले तिनीहरूलाई एउटा कठोर हुँदै जाने पकड्द्वारा समाते ।

اِنَّا لَمَّا طَغَا الْمَآءُ حَمَلْنٰكُمْ فِى الْجَارِيَةِ ۙ ﴿١٢﴾

१२. वस्तुत:, जब पानी माथि चढ्न लाग्यो हामीले तिमीहरूलाई एउटा नाउमा सवार गरेका थियौं,

لِنَجْعَلَهَا لَكُمْ تَذْكِرَةً وَّتَعِيَهَآ اُذُنٌ وَّاعِيَةٌ ﴿١٣﴾

१३. ताकि त्यस घटनालाई हामी तिमीहरूका निम्ति उपदेशस्वरूप बनाउँ तथा सुन्नसक्ने कानले त्यसलाई सुनून् ।

فَاِذَا نُفِخَ فِى الصُّوْرِ نَفْخَةٌ وَّاحِدَةٌ ۙ ﴿١٤﴾

१४. तथा जब बिगुलमा एकैपटक एउटा ठूलो ध्वनि बजाइनेछ,

وَّحُمِلَتِ الْاَرْضُ وَالْجِبَالُ فَدُكَّتَا دَكَّةً وَّاحِدَةً ۙ ﴿١٥﴾

१५. तथा पृथ्वी र पर्वतहरूलाई माथि उठाइनेछ, अत: तिनीहरू एकक्षणमै टुका टुका हुन पुग्नेछन् ।

فَيَوْمَئِذٍ وَّقَعَتِ الْوَاقِعَةُ ۙ ﴿١٦﴾

१६. त्यसदिन त्यो (निर्धारित) ठूलो (महान) घटना प्रकट हुनेछ

وَانْشَقَّتِ السَّمَآءُ فَهِيَ يَوْمَئِذٍ وَّاهِيَةٌ ﴿١٧﴾

१७. तथा आकाश पूर्णरूपमा फुट्नेछ, र त्यसदिन त्यो अति दुर्बल हुन पुग्नेछ ।

وَّالْمَلَكُ عَلٰٓى اَرْجَآئِهَا ۚ وَيَحْمِلُ عَرْشَ رَبِّكَ فَوْقَهُمْ يَوْمَئِذٍ ثَمٰنِيَةٌ ﴿١٨﴾

१८. तथा त्यसका छेउछाउमा फरिस्ताहरू (उभिएका) हुनेछन्, तथा त्यसदिन तिनीहरूभन्दा माथि ती आठवटा (देवदूतहरू) ले तिम्रा प्रतिपालकको महासिंहासनलाई उठाउने छन् ।

يَوْمَئِذٍ تُعْرَضُوْنَ لَا تَخْفٰى مِنْكُمْ خَافِيَةٌ ﴿١٩﴾

१९. त्यसदिन तिमीहरूलाई (अल्लाहका सामुन्ने) उपस्थित गरिनेछ, (तथा) तिमीहरूको कुनै (भेद) गुप्त रहनेछैन ।

فَاَمَّا مَنْ اُوْتِيَ كِتٰبَهٗ بِيَمِيْنِهٖ ۙ فَيَقُوْلُ هَآؤُمُ اقْرَءُوْا كِتٰبِيَهْ ﴿٢٠﴾

२०. तब, जसलाई उसको बही (कार्यविवरण) दाहिने हातमा प्रदान गरिनेछ, उसले भन्नेछ, “आऊ, मेरो बही हेर ।

اِنِّيْ ظَنَنْتُ اَنِّيْ مُلٰقٍ حِسَابِيَهْ ﴿٢١﴾

२१. निश्चय नै, मलाई मेरो हिसाब मिल्नेछ भनी म जान्दथें ।”

فَهُوَ فِيْ عِيْشَةٍ رَّاضِيَةٍ ﴿٢٢﴾

२२. अत: त्यसलाई आनन्दपूर्ण जीवन प्राप्त हुनेछ,

فِيْ جَنَّةٍ عَالِيَةٍ ﴿٢٣﴾

२३. उच्च बगैंचामा,

قُطُوْفُهَا دَانِيَةٌ ﴿٢٤﴾

२४. जहाँ फलका झुप्पाहरू सहजै प्राप्त हुने अवस्थामा रहनेछन् ।

كُلُوْا وَاشْرَبُوْا هَنِيْٓـئًا بِمَآ اَسْلَفْتُمْ فِى الْاَيَّامِ الْخَالِيَةِ ﴿٢٥﴾

२५. अतीतका दिनहरूमा तिमीहरूले गरेका (पुण्य) कार्यहरूको फलस्वरूप तिमीहरू खुसीका साथ खाऊ र पिऊ ।”

وَاَمَّا مَنْ اُوْتِيَ كِتٰبَهٗ بِشِمَالِهٖ ۙ فَيَقُوْلُ يٰلَيْتَنِيْ لَمْ اُوْتَ كِتٰبِيَهْ ﴿٢٦﴾

२६. परन्तु त्यो व्यक्ति, जसलाई उसको बही (कार्यविवरण) उसको देब्रे हातमा दिइनेछ, उसले भन्नेछ, “हाय ! यदि मलाई मेरो बही प्रदान नगरिएको भए हुने थियो ।”

وَلَمْ أَدْرِ مَا حِسَابِيَهْ

२७. "मेरो हिसाबका बारेमा मैले थाहा नै नपाएको भए हुने थियो !

يَا لَيْتَهَا كَانَتِ الْقَاضِيَةَ

२८. "हाय ! मेरा निम्ति (कानूनमा) विनाशको निर्णय भएको भए हुने थियो भन्ने मेरो चाहना कसरी (प्रकट) गरुँ !

مَا أَغْنَىٰ عَنِّي مَالِيَهْ

२९. मेरो सम्पत्तिले मलाई कुनै फाइदा दिएन ।

هَلَكَ عَنِّي سُلْطَانِيَهْ

३०. मेरो सामर्थ्य समाप्त हुन गयो ।"

خُذُوهُ فَغُلُّوهُ

३१. त्यसलाई समात र बेडी लगाऊ,

ثُمَّ الْجَحِيمَ صَلُّوهُ

३२. त्यसपछि त्यसलाई नर्कमा हाल ।

ثُمَّ فِي سِلْسِلَةٍ ذَرْعُهَا سَبْعُونَ ذِرَاعًا فَاسْلُكُوهُ

३३. अत: त्यसलाई सत्तरी हात लामो जञ्जीरले बाँध,

إِنَّهُ كَانَ لَا يُؤْمِنُ بِاللَّهِ الْعَظِيمِ

३४. वस्तुत: त्यो व्यक्ति महिमामय अल्लाहप्रति विश्वास गर्दैनथ्यो,

وَلَا يَحُضُّ عَلَىٰ طَعَامِ الْمِسْكِينِ

३५. तथा दरिद्रहरूलाई खाना ख्वाउन मानिसहरूलाई प्रोत्साहित गर्दैनथ्यो ।"

فَلَيْسَ لَهُ الْيَوْمَ هَاهُنَا حَمِيمٌ

३६. अत: त्यहाँ त्यसदिन त्यसको कोही मित्र हुने छैन;

وَلَا طَعَامٌ إِلَّا مِنْ غِسْلِينٍ

३७. घाउ धोएको (पानी)बाहेक त्यसलाई अन्य केही खाद्य प्राप्त हुनेछैन,

لَا يَأْكُلُهُ إِلَّا الْخَاطِئُونَ

३८. त्यो खाद्य केवल पापी व्यक्तिहरूले खाने गर्छन् ।"

فَلَا أُقْسِمُ بِمَا تُبْصِرُونَ

३९. परन्तु होइन, (अपितु) म तिमीहरूले देख्ने गरेका सम्पूर्ण वस्तुहरूको शपथ खान्छु,

وَمَا لَا تُبْصِرُونَ ﴿٣٩﴾

४०. तथा ती सम्पूर्ण वस्तुहरूको (पनि) शपथ जसलाई तिमीहरू देख्दैनौ,

إِنَّهُ لَقَوْلُ رَسُولٍ كَرِيمٍ ﴿٤٠﴾

४१. अर्थात् त्यो निश्चयपूर्वक एकजना महान सन्देशवाहकद्वारा (प्रस्तुत गरिए) को वाणी हो ।

وَمَا هُوَ بِقَوْلِ شَاعِرٍ ۚ قَلِيلًا مَّا تُؤْمِنُونَ ﴿٤١﴾

४२. तथा त्यो कुनै कविको कुरो होइन, (परन्तु) तिमीहरू पटक्कै विश्वास गर्दैनौ !

وَلَا بِقَوْلِ كَاهِنٍ ۚ قَلِيلًا مَّا تَذَكَّرُونَ ﴿٤٢﴾

४३. न त त्यो कुनै ज्योतिषीको वक्तव्य हो, (तर) तिमीहरू अति कमै अर्ती लिन्छौ !

تَنزِيلٌ مِّن رَّبِّ الْعَالَمِينَ ﴿٤٣﴾

४४. (यो ता) विश्व-ब्रह्माण्डका स्वामीकातर्फबाट अवतीर्ण भएको (आकाशवाणी) हो ।

وَلَوْ تَقَوَّلَ عَلَيْنَا بَعْضَ الْأَقَاوِيلِ ﴿٤٤﴾

४५. तथा यदि उनले हामीप्रति कुनै साधारण कुरो मिथ्यारूपमा गढेका भए तापनि,

لَأَخَذْنَا مِنْهُ بِالْيَمِينِ ﴿٤٥﴾

४६. हामी निश्चय नै उनलाई दाहिने हातले समात्ने थियौं,

ثُمَّ لَقَطَعْنَا مِنْهُ الْوَتِينَ ﴿٤٦﴾

४७. तथा त्यसपछि हामी अवश्य उनको श्वासनली काट्ने थियौं,

فَمَا مِنكُم مِّنْ أَحَدٍ عَنْهُ حَاجِزِينَ ﴿٤٧﴾

४८. तथा (त्यस अवस्थामा) तिमीहरूमध्ये कसैले उनलाई (हामीबाट) बचाउन सक्ने थिएनौ ।

وَإِنَّهُ لَتَذْكِرَةٌ لِّلْمُتَّقِينَ ﴿٤٨﴾

४९. तथा यो धर्मनिष्ठ व्यक्तिहरूका निम्ति निस्सन्देह एउटा उपदेशस्वरूप रहेको छ ।

وَإِنَّا لَنَعْلَمُ أَنَّ مِنكُم مُّكَذِّبِينَ ﴿٤٩﴾

५०. तथा तिमीहरूमध्ये केही (हाम्रा निर्देशनहरूलाई) अस्वीकार गर्ने व्यक्तिहरू छन् भन्ने कुरालाई हामी राम्ररी जान्दछौं ।

وَاِنَّهٗ لَحَسْرَةٌ عَلَى الْكٰفِرِيْنَ ۝٥١

५१. तथा, अविश्वासीहरूका निम्ति निस्सन्देह यो एउटा खेद (को साधन) हुनेछ -भनी हामी जान्दछौं) ।

وَاِنَّهٗ لَحَقُّ الْيَقِيْنِ ۝٥٢

५२. तथा यो निश्चयपूर्वक अटल सत्य रहेको छ ।

فَسَبِّحْ بِاسْمِ رَبِّكَ الْعَظِيْمِ ۝٥٣

५३. अत: तिमी आफ्ना महिमामय प्रतिपालकको नामको गुणगान गर ।




अल्-म'आरिज
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ۝١

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

سَاَلَ سَآئِلٌۢ بِعَذَابٍ وَّاقِعٍ ۝٢

२. सोध्ने व्यक्तिले अटल दण्ड कहिले अवतीर्ण हुनेछ भनी सोध्छ ।

لِّلْكٰفِرِيْنَ لَيْسَ لَهٗ دَافِعٌ ۝٣

३. अविश्वासी व्यक्तिहरूबाट त्यसलाई कसैले हटाउन सक्नेछैन ।

مِّنَ اللّٰهِ ذِى الْمَعَارِجِ ۝٤

४. (यो महान) दर्जाहरूका स्वामी अल्लाहकातर्फबाट (रहेको छ) ।

تَعْرُجُ الْمَلٰٓئِكَةُ وَالرُّوْحُ اِلَيْهِ فِيْ يَوْمٍ كَانَ مِقْدَارُهٗ خَمْسِيْنَ اَلْفَ سَنَةٍ ۝٥

५. फरिस्ताहरू र पवित्र आत्मा उनीतर्फ यस्तो एउटा दिनमा आरोहण गर्छन् जसको गणना पचास हजार वर्ष बराबर रहेको छ ।

فَاصْبِرْ صَبْرًا جَمِيْلًا ۝٦

६. अत: अत्योत्तम ढङ्गले धैर्यधारण गर ।

اِنَّهُمْ يَرَوْنَهٗ بَعِيْدًا ۝٧

७. तिनीहरू त्यसलाई अति टाढा रहेको छ भन्ने ठान्छन्,

وَّنَرٰىهُ قَرِيْبًا ۝٧

८. परन्तु हामी त्यसलाई अति निकट रहेको देख्छौं ।

يَوْمَ تَكُوْنُ السَّمَآءُ كَالْمُهْلِ ۝٨

९. त्यसदिन आकाश पग्लिएको ताँवासदृश हुनेछ,

وَتَكُوْنُ الْجِبَالُ كَالْعِهْنِ ۝٩

१०. तथा पर्वतहरू कपासका गोलाहरूसदृश हुनेछन्,

وَلَا يَسْـَٔلُ حَمِيْمٌ حَمِيْمًا ۝١٠

११. तथा कुनै मित्रले आफ्नो कुनै मित्रका सम्बन्धमा सोधपुछ गर्नेछैन ।

يُّبَصَّرُوْنَهُمْ ۭ يَوَدُّ الْمُجْرِمُ لَوْ يَفْتَدِيْ مِنْ عَذَابِ يَوْمِىِٕذٍۭ بِبَنِيْهِ ۝١١

१२. तिनीहरूलाई परस्पर एक अर्काका दृष्टिका सामुन्ने राखिनेछ, तथा अपराधी व्यक्तिले आफ्नो सन्तानलाई (बलि) दिएर स्वयम्लाई त्यसदिनको दण्डबाट बचाउन चाहने छ,

وَصَاحِبَتِهٖ وَاَخِيْهِ ۝١٢

१३. तथा आफ्नी पत्नी र आफ्नो भाइ,

وَفَصِيْلَتِهِ الَّتِيْ تُـْٔوِيْهِ ۝١٣

१४. तथा उसका ती कुटुम्बहरू, जसले उसलाई आश्रय दिने गर्थे,

وَمَنْ فِي الْاَرْضِ جَمِيْعًا ۙ ثُمَّ يُنْجِيْهِ ۝١٤

१५. तथा यदि उसले यस प्रकार स्वयम्लाई बचाउन सकेमा पृथ्वीमा रहेका सम्पूर्ण वस्तुहरूलाई (बलि दिएर) स्वयम्लाई बचाउन चाहने छ ।

كَلَّا ۭ اِنَّهَا لَظٰى ۝١٥

१६. परन्तु असम्भव ! त्यो ता निश्चय नै एउटा यस्तो अग्निको ज्वाला रहेको छ,

نَزَّاعَةً لِّلشَّوٰى ۝١٦

१७. जसले (शरीरको) अन्तसम्म रहेको छालालाई (समेत) काढेर छाड्छ ।

تَدْعُوْا مَنْ اَدْبَرَ وَتَوَلّٰى ۝١٧

१८. त्यसले पिठ्यूँ देखाएर भाग्ने तथा पछि हटने व्यक्तिलाई बोलाउनेछ ।

وَجَمَعَ فَاَوْعٰى ۝١٨

१९. तथा (सम्पत्ति) एकत्रित गर्ने र (त्यसलाई) जम्मा गरी रोकर राख्ने व्यक्तिलाई ।

إِنَّ الْإِنْسَانَ خُلِقَ هَلُوعًا ﴿٢٠﴾

२०. वस्तुतः, मानिस जन्मजात अधीर र लोभी रहेको छ ।

إِذَا مَسَّهُ الشَّرُّ جَزُوعًا ﴿٢١﴾

२१. जब उसमाथि सङ्कट आइलाग्छ, त्यो व्यक्ति शोकाकुल हुन पुग्छ,

وَإِذَا مَسَّهُ الْخَيْرُ مَنُوعًا ﴿٢٢﴾

२२. परन्तु जब उसलाई कुनै लाभांश प्राप्त हुन्छ तब त्यो व्यक्ति कृपण बन्न पुग्छ ।

إِلَّا الْمُصَلِّينَ ﴿٢٣﴾

२३. परन्तु नमाज पढ्ने व्यक्तिहरू भने त्यस्ता हुँदैनन् ।

الَّذِينَ هُمْ عَلَىٰ صَلَاتِهِمْ دَائِمُونَ ﴿٢٤﴾

२४. (अर्थात्) ती व्यक्तिहरू, जो आफ्नो नमाज (प्रार्थना) मा स्थिर रहन्छन्,

وَالَّذِينَ فِي أَمْوَالِهِمْ حَقٌّ مَعْلُومٌ ﴿٢٥﴾

२५. तथा जसको सम्पत्तिमा एउटा निर्धारित अंश छ,

لِلسَّائِلِ وَالْمَحْرُومِ ﴿٢٦﴾

२६. भिखारीहरूका निम्ति तथा भिक्षा नमाग्ने अभावग्रस्त -निर्धनी)हरूका निम्ति ।

وَالَّذِينَ يُصَدِّقُونَ بِيَوْمِ الدِّينِ ﴿٢٧﴾

२७. तथा ती व्यक्तिहरू जसले निर्णयको दिन नितान्त सत्य रहेको छ भनी विश्वास गर्छन्,

وَالَّذِينَ هُمْ مِنْ عَذَابِ رَبِّهِمْ مُشْفِقُونَ ﴿٢٨﴾

२८. तथा जुन व्यक्तिहरू आफ्ना प्रतिपालकको दण्डबाट त्रासित रहन्छन् –

إِنَّ عَذَابَ رَبِّهِمْ غَيْرُ مَأْمُونٍ ﴿٢٩﴾

२९. वस्तुतः तिनीहरूका प्रतिपालकको दण्ड अति कठोर रहेको छ ,

وَالَّذِينَ هُمْ لِفُرُوجِهِمْ حَافِظُونَ ﴿٣٠﴾

३०. तथा जसले आफ्ना गुप्ताङ्गहरूको सुरक्षा गर्छन् –

إِلَّا عَلَىٰ أَزْوَاجِهِمْ أَوْ مَا مَلَكَتْ أَيْمَانُهُمْ فَإِنَّهُمْ غَيْرُ مَلُومِينَ ﴿٣١﴾

३१. सिवाय तिनीहरूका आफ्ना पत्नीहरू र तिनीहरूका दाहिने हातले पालेकाहरू (दासीहरू)बाहेक; तिनीहरूमाथि कुनै दोष लाग्नेछैन,

فَمَنِ ابْتَغٰى وَرَآءَ ذٰلِكَ فَأُولٰٓئِكَ هُمُ الْعٰدُوْنَ ﴿٣١﴾

३१. परन्तु जुन व्यक्तिहरू त्यसभन्दा बाहिर जाने प्रयास गर्छन्, तिनीहरू नै वस्तुतः सीमोल्लङ्घनकारी व्यक्तिहरू रहेका छन्–

وَالَّذِيْنَ هُمْ لِأَمٰنٰتِهِمْ وَعَهْدِهِمْ رٰعُوْنَ ﴿٣٢﴾

३२. तथा जसले आफ्नो अमानत र आफ्नो अङ्गीकारको सुरक्षा गर्छन्,

وَالَّذِيْنَ هُمْ بِشَهٰدٰتِهِمْ قَآئِمُوْنَ ﴿٣٣﴾

३३. तथा जुन व्यक्तिहरू आफ्ना साक्षीहरूप्रति कायम रहन्छन्,

وَالَّذِيْنَ هُمْ عَلٰى صَلَاتِهِمْ يُحَافِظُوْنَ ﴿٣٤﴾

३४. तथा जुन व्यक्तिहरू आफ्ना नमाजहरूको दृढतापूर्वक सुरक्षा गर्ने गर्छन्

أُولٰٓئِكَ فِيْ جَنّٰتٍ مُّكْرَمُوْنَ ﴿٣٥﴾

३५. यस्ता व्यक्तिहरू सम्मानपूर्वक बगैंचामा बसोबास गर्नेछन् ।

فَمَالِ الَّذِيْنَ كَفَرُوْا قِبَلَكَ مُهْطِعِيْنَ ﴿٣٦﴾

३६. परन्तु अविश्वासीहरूलाई के भएको छ र तिनीहरू तिमीतर्फ हतारिंदै आइरहेछन्,

عَنِ الْيَمِيْنِ وَعَنِ الشِّمَالِ عِزِيْنَ ﴿٣٧﴾

३७. विभिन्न समूहको रूपमा, दाहिनेतर्फबाट र देब्रेतर्फबाट पनि?

أَيَطْمَعُ كُلُّ امْرِئٍ مِّنْهُمْ أَنْ يُّدْخَلَ جَنَّةَ نَعِيْمٍ ﴿٣٨﴾

३८. के तिनीहरूमध्ये हरेक व्यक्ति वैभवपूर्ण बगैंचामा प्रवेश गर्ने आशा राख्छ?

كَلَّا ۚ إِنَّا خَلَقْنٰهُمْ مِّمَّا يَعْلَمُوْنَ ﴿٣٩﴾

३९. त्यो हुनै सक्दैन ! हामीले तिनीहरूलाई त्यस (वस्तु) बाट सृष्टि गरेका छौं जसलाई तिनीहरू जान्दछन् ।

فَلَآ أُقْسِمُ بِرَبِّ الْمَشٰرِقِ وَالْمَغٰرِبِ إِنَّا لَقٰدِرُوْنَ ﴿٤٠﴾

४०. परन्तु होइन ! (अपितु) हामी पूर्ण सामर्थ्यवान रहेका छौं भन्ने कुरामा म पूर्व र पश्चिम दिशाका स्वामीको शपथ खान्छु

عَلٰٓى أَنْ نُّبَدِّلَ خَيْرًا مِّنْهُمْ ۙ وَمَا نَحْنُ بِمَسْبُوْقِيْنَ ﴿٤١﴾

४१. (अर्थात्) तिनीहरूको स्थानमा तिनीहरूभन्दा उत्तम मानिसहरू ल्याउने कार्यमा, तथा हामीलाई कसैले (आफ्नो योजनामा) हराउन सक्दैन ।

فَذَرْهُمْ يَخُوضُوا وَيَلْعَبُوا حَتّٰى يُلٰقُوا يَوْمَهُمُ الَّذِيْ يُوْعَدُوْنَ ﴿٤٢﴾

४३. अतः तिनीहरूलाई तबसम्म व्यर्थ कुराहरूमा व्यस्त रहन र खेल्न एक्लै छाडिदेउ जब तिनीहरूले त्यस दिनलाई देख्नेछन्, जसबारे तिनीहरूलाई वचन दिइएको छ,

يَوْمَ يَخْرُجُوْنَ مِنَ الْاَجْدَاثِ سِرَاعًا كَاَنَّهُمْ اِلٰى نُصُبٍ يُّوْفِضُوْنَ ﴿٤٣﴾

४४. त्यसदिन जब तिनीहरू आ-आफ्ना चिहानबाट हतारिँदै निस्कनेछन्, मानौं तिनीहरू आफ्नो (विशेष) लक्षतर्फ दौडिरहेछन्,

خَاشِعَةً اَبْصَارُهُمْ تَرْهَقُهُمْ ذِلَّةٌ ۚ ذٰلِكَ الْيَوْمُ الَّذِيْ كَانُوْا يُوْعَدُوْنَ ﴿٤٤﴾

४५. तिनीहरूका दृष्टिहरू झुकेका र मुहारमा अपमान (कलङ्क) छाएको हुनेछ । यही नै त्यो दिन हो जसको तिनीहरूलाई वचन दिइएको थियो ।

سُوْرَةُ نُوْحٍ مَّكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ تِسْعٌ وَّعِشْرُوْنَ اٰيَةً وَّرُكُوْعَانِ

## नूह
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

اِنَّآ اَرْسَلْنَا نُوْحًا اِلٰى قَوْمِهٖٓ اَنْ اَنْذِرْ قَوْمَكَ مِنْ قَبْلِ اَنْ يَّاْتِيَهُمْ عَذَابٌ اَلِيْمٌ ②

२. हामीले नूहलाई उनका मानिसहरूतर्फ (के भनेर) पठाएका थियौं (भने), "तिमी आफ्ना मानिसहरूलाई तिनीहरूमाथि पीडादायक दण्ड अवतीर्ण हुनुअघि नै सावधान गर ।"

قَالَ يٰقَوْمِ اِنِّيْ لَكُمْ نَذِيْرٌ مُّبِيْنٌ ③

३. उनले भने, "हे मेरा मानिसहरू हो ! म तिमीहरूतर्फ एउटा स्पष्ट रूपमा सावधान गर्ने (व्यक्तिस्वरूप) आएको छु,

اَنِ اعْبُدُوا اللّٰهَ وَاتَّقُوْهُ وَاَطِيْعُوْنِ ④

४. अर्थात्, तिमीहरू अल्लाहको उपासना गर तथा उनीसितै डराऊ र मेरो कुरो मान

يَغْفِرْ لَكُمْ مِّنْ ذُنُوْبِكُمْ وَيُؤَخِّرْكُمْ اِلٰٓى اَجَلٍ مُّسَمًّى ۭ اِنَّ اَجَلَ اللّٰهِ اِذَا جَاۗءَ لَا يُؤَخَّرُ ۘ لَوْ كُنْتُمْ تَعْلَمُوْنَ ⑤

५. "उनले तिमीहरूका पापहरू तिमीहरूलाई क्षमा गरिदिनेछन्, तथा एउटा निर्धारित समयसम्म तिमीहरूलाई अवसर दिनेछन् । वस्तुत: यदि तिमीहरू जान्दछौ भने, जब अल्लाहले निर्धारित गरेको समय आउँछ त्यसलाई टार्न (पछि सार्न) सकिनेछैन ।"

قَالَ رَبِّ اِنِّيْ دَعَوْتُ قَوْمِيْ لَيْلًا وَّنَهَارًا ⑥

६. उनले भने, "हे मेरा प्रतिपालक, मैले आफ्ना मानिसहरूलाई राति पनि र दिनको समयमा पनि बोलाएँ,

فَلَمْ يَزِدْهُمْ دُعَاۗءِيْٓ اِلَّا فِرَارًا ⑦

७. "परन्तु मेरो आह्वानले (तिनीहरूलाई मबाट) झनझन टाढा भगायो ।।

وَاِنِّيْ كُلَّمَا دَعَوْتُهُمْ لِتَغْفِرَ لَهُمْ جَعَلُوْٓا اَصَابِعَهُمْ فِيْٓ اٰذَانِهِمْ وَاسْتَغْشَوْا ثِيَابَهُمْ وَاَصَرُّوْا وَاسْتَكْبَرُوا

८. "तथा तिमीले तिनीहरूलाई अवश्य क्षमा प्रदान गर्नेछौ भनी मैले जब जब तिनीहरूलाई बोलाएँ, तिनीहरूले आफ्ना

اِسْتِكْبَارًا ⑦

कानमा आफ्नै औंलाहरू ठोसे र स्वयमलाई कपडाले ढाकेर राखे, तथा (आफ्ना अन्यायपूर्ण कार्यहरूमा) डटिरहे र अत्याधिक अहङ्कारपूर्ण व्यवहार गर्न लागे ।

ثُمَّ اِنِّيْ دَعَوْتُهُمْ جِهَارًا ⑧

९. त्यसपछि मैले (तिम्रो मार्गतर्फ) तिनीहरूलाई प्रकाश्यरूपमा आह्वान गरें ।

ثُمَّ اِنِّيْٓ اَعْلَنْتُ لَهُمْ وَ اَسْرَرْتُ لَهُمْ اِسْرَارًا ⑩

१०. पुनः मैले तिनीहरूलाई सार्वजनिक रूपमा सम्झाएँ, तथा एकान्तमा (समेत) तिनीहरूसित कुरा गरें ।

فَقُلْتُ اسْتَغْفِرُوْا رَبَّكُمْ اِنَّهٗ كَانَ غَفَّارًا ⑪

११. तथा मैले (के पनि) भनें (भने), "तिमीहरू आफ्ना प्रतिपालकसित क्षमायाचना गर, किनभने उनी परम क्षमाशील छन् ।

يُّرْسِلِ السَّمَآءَ عَلَيْكُمْ مِّدْرَارًا ⑫

१२. उनले तिमीहरूका निम्ति प्रशस्त वर्षा बर्साउनेछन्,

وَّ يُمْدِدْكُمْ بِاَمْوَالٍ وَّ بَنِيْنَ وَ يَجْعَلْ لَّكُمْ جَنّٰتٍ وَّ يَجْعَلْ لَّكُمْ اَنْهٰرًا ⑬

१३. तथा उनले तिमीहरूलाई सम्पत्ति र सन्तानद्वारा समृद्ध तुल्याउनेछन्, तथा उनले तिमीहरूलाई बगैंचाहरू र नहरहरू प्रदान गर्नेछन् ।

مَا لَكُمْ لَا تَرْجُوْنَ لِلّٰهِ وَقَارًا ⑭

१४. तिमीहरूलाई के भएको छ र तिमीहरू अल्लाहको महिमा वर्णन गर्दैनौ?

وَ قَدْ خَلَقَكُمْ اَطْوَارًا ⑮

१५. तथा उनले तिमीहरूलाई विभिन्न स्तर अन्तर्गत सृष्टि गरेका छन् ।

اَلَمْ تَرَوْا كَيْفَ خَلَقَ اللّٰهُ سَبْعَ سَمٰوٰتٍ طِبَاقًا ⑯

१६. अल्लाहले सातवटा आकाशमण्डल लाई कसरी पूर्ण श्रेणीवद्धरूपमा सृष्टि गरेका छन् भन्ने कुरालाई तिमीहरूले देखेका छैनौ,

وَّ جَعَلَ الْقَمَرَ فِيْهِنَّ نُوْرًا وَّ جَعَلَ الشَّمْسَ سِرَاجًا ⑰

१७. तथा त्यहाँ उनले ज्योतिस्वरूप चन्द्रमा बनाएका छन् तथा सूर्यलाई

दीपकस्वरूप बनाएका छन्?

وَاللَّهُ أَنبَتَكُم مِّنَ الْأَرْضِ نَبَاتًا ﴿١٧﴾

१८. तथा तिमीहरूलाई अल्लाहले पृथ्वीबाट वनस्पति हुर्काएझैं हुर्काएका छन्,

ثُمَّ يُعِيدُكُمْ فِيهَا وَيُخْرِجُكُمْ إِخْرَاجًا ﴿١٨﴾

१९. "त्यसपछि उनले तिमीहरूलाई त्यसैतर्फ फर्काउँनेछन् र तिमीहरूलाई विशेष तरिकाले (बाहिर) निकाल्ने छन् ।

وَاللَّهُ جَعَلَ لَكُمُ الْأَرْضَ بِسَاطًا ﴿١٩﴾

२०. तथा पृथ्वीलाई अल्लाहले तिमीहरूका निम्ति विस्तृत समतल बनाएका छन् ।

لِّتَسْلُكُوا مِنْهَا سُبُلًا فِجَاجًا ﴿٢٠﴾

२१. ताकि तिमीहरू त्यसका चौडा र खुल्ला मार्गहरूमा परिभ्रमण गर ।"

قَالَ نُوحٌ رَّبِّ إِنَّهُمْ عَصَوْنِي وَاتَّبَعُوا مَن لَّمْ يَزِدْهُ مَالُهُ وَوَلَدُهُ إِلَّا خَسَارًا ﴿٢١﴾

२२. नूहले भने, "हे मेरा प्रतिपालक, तिनीहरूले मेरो अवज्ञा गरे तथा यस्तो व्यक्तिको अनुसरण गर्न लागे जसको सम्पत्ति र सन्तानले त्यसलाई केवल घाटा तर्फै बढाएको छ ।

وَمَكَرُوا مَكْرًا كُبَّارًا ﴿٢٢﴾

२३. तथा तिनीहरूले एउटा वृहत योजना बनाए ।

وَقَالُوا لَا تَذَرُنَّ آلِهَتَكُمْ وَلَا تَذَرُنَّ وَدًّا وَلَا سُوَاعًا وَلَا يَغُوثَ وَيَعُوقَ وَنَسْرًا ﴿٢٣﴾

२४. तथा तिनीहरू (परस्पर एक अर्कालाई) भन्ने गर्छन्, (कुनै परिस्थितिमा पनि) तिमीहरू आफ्ना उपास्यहरूलाई नत्याग । तथा न वाद*लाई त्याग न त सुवालाई*, न यागोसलाई* तथा न यओकलाई* तथा न त नसर्लाई* नै त्याग ।"

---

* अरबका मूर्तिपुजकहरूका मूर्तिहरू ।

وَقَدْ اَضَلُّوْا كَثِيْرًا ۚ وَلَا تَزِدِ الظّٰلِمِيْنَ اِلَّا ضَلٰلًا ﴿٢٤﴾

२४. तथा तिनीहरूले धेरै मानिसहरूलाई पथभ्रष्ट गरेका छन्, अतः तिमी अत्याचारीहरूलाई केवल भ्रष्टपूर्ण मार्गमा अघि बढाउ ।"

مِمَّا خَطِيْٓـٰٔتِهِمْ اُغْرِقُوْا فَاُدْخِلُوْا نَارًا ۙ فَلَمْ يَجِدُوْا لَهُمْ مِّنْ دُوْنِ اللّٰهِ اَنْصَارًا ﴿٢٥﴾

२५. तिनीहरूलाई तिनकै पापका कारण पानीमा डुबाइयो तथा अग्निमा दाखिल गरियो । तथा अल्लाहविरुद्ध तिनीहरूले स्वयम्का निम्ति कुनै सहयोगी पाएनन् ।

وَقَالَ نُوْحٌ رَّبِّ لَا تَذَرْ عَلَى الْاَرْضِ مِنَ الْكٰفِرِيْنَ دَيَّارًا ﴿٢٦﴾

२६. तथा नूहले भने, "हे मेरा प्रतिपालक, यस धर्तीमा अविश्वासीहरूमध्ये कसैलाई आबाद रहन नदेउ ,

اِنَّكَ اِنْ تَذَرْهُمْ يُضِلُّوْا عِبَادَكَ وَلَا يَلِدُوْٓا اِلَّا فَاجِرًا كَفَّارًا ﴿٢٧﴾

२७. किनभने यदि तिमीले तिनीहरूलाई छाड्यौ भने, तिनीहरूले (केवल) तिम्रा सेवकहरूलाई पथभ्रष्ट तुल्याउनेछन् तथा पापी (र) अविश्वासीबाहेक अन्य कुनै सन्तान जन्माउनेछैनन् ।

رَبِّ اغْفِرْ لِيْ وَلِوَالِدَيَّ وَلِمَنْ دَخَلَ بَيْتِيَ مُؤْمِنًا وَّ لِلْمُؤْمِنِيْنَ وَالْمُؤْمِنٰتِ ۗ وَلَا تَزِدِ الظّٰلِمِيْنَ اِلَّا تَبَارًا ﴿٢٨﴾

२८. हे मेरा प्रतिपालक, मलाई र मेरा मातापितालाई तथा त्यस व्यक्तिलाई क्षमादान गर जसले विश्वासीस्वरूप मेरो घरमा प्रवेश गर्छ, यसै प्रकार विश्वासी पुरुषहरूलाई र विश्वासी महिलाहरूलाई (पनि), तथा अत्याचारीहरूलाई भने तिमी केवल विनाशतर्फ धकेल ।"

سُوْرَةُ الْجِنِّ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ تِسْعٌ وَّعِشْرُوْنَ اٰيَةً وَّرُكُوْعَانِ

## अल्-जिन्न

(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ۝

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

قُلْ اُوْحِيَ اِلَيَّ اَنَّهُ اسْتَمَعَ نَفَرٌ مِّنَ الْجِنِّ فَقَالُوْٓا اِنَّا سَمِعْنَا قُرْاٰنًا عَجَبًا ۝١

२. तिमी भन, "एउटा जिन्नको समूहले ध्यानपुर्वक (कुरान) सुन्यो भनी मलाई आकाशवाणी भएको छ, तथा तिनीहरूले भने, "साँचै नै हामीले एउटा अचम्मको कुरान सुनेका छौं,

يَّهْدِيْٓ اِلَى الرُّشْدِ فَاٰمَنَّا بِهٖ ۭ وَلَنْ نُّشْرِكَ بِرَبِّنَآ اَحَدًا ۝٢

३. "जसले सन्मार्गतर्फ मार्गप्रदर्शन गर्छ, अतः हामीले त्यसप्रति विश्वास गरेका छौं, तथा हामी कसैलाई आफ्ना प्रतिपालकको भागीदार तुल्याउनेछैनौं ।

وَّاَنَّهٗ تَعٰلٰى جَدُّ رَبِّنَا مَا اتَّخَذَ صَاحِبَةً وَّلَا وَلَدًا ۝٣

४. "तथा हाम्रा प्रतिपालकको गौरव अति उच्च रहेको छ -भनी हामी विश्वास गर्छौं) उनले स्वयम्का निम्ति न पत्नी ग्रहण गरेका छन् न त पुत्र नै ।

وَّاَنَّهٗ كَانَ يَقُوْلُ سَفِيْهُنَا عَلَى اللّٰهِ شَطَطًا ۝٤

५. "तथा (के पनि सत्य हो भने), हामीमध्ये मूर्ख व्यक्तिहरू अल्लाहका सम्बन्धमा अनुचित मिथ्या कुराहरू गर्ने गर्छन् ।

وَّاَنَّا ظَنَنَّآ اَنْ لَّنْ تَقُوْلَ الْاِنْسُ وَالْجِنُّ عَلَى اللّٰهِ كَذِبًا ۝٥

६. "तथा मानिस र जिन्नले कदापि अल्लाहका सम्बन्धमा मिथ्या कुरा गर्दैनन् भन्ने हाम्रो धारणा थियो ।

وَّاَنَّهٗ كَانَ رِجَالٌ مِّنَ الْاِنْسِ يَعُوْذُوْنَ بِرِجَالٍ مِّنَ الْجِنِّ فَزَادُوْهُمْ رَهَقًا ۝٦

७. "तथा निस्सन्देह, सर्वसाधारण मानिसहरूमध्ये केही व्यक्तिहरू केही जिन्नहरू (ठूलाबडाहरू) सित आश्रय माग्ने गर्थे, तथा (यस प्रकार पछि गएर) तिनीहरूमा अहङ्कार बढ्दै गयो,

وَّاَنَّهُمْ ظَنُّوْا كَمَا ظَنَنْتُمْ اَنْ لَّنْ يَّبْعَثَ اللّٰهُ اَحَدًا ﴿٨﴾

८. "तथा जसरी तिमीहरू अल्लाहले कदापि कुनै (सन्देशवाहक) पठाउनेछैनन् भन्ने धारणा राख्छौ, तिनीहरू पनि निस्सन्देह त्यही धारणा राख्थे ।

وَّاَنَّا لَمَسْنَا السَّمَآءَ فَوَجَدْنٰهَا مُلِئَتْ حَرَسًا شَدِيْدًا وَّشُهُبًا ﴿٩﴾

९. "तथा हामीले आकाशलाई स्पर्श गऱ्यौं, परन्तु त्यसलाई हामीले दृढ पहरेदार र खस्ने तारा (उल्का) ले परिपूर्ण पायौं ।

وَّاَنَّا كُنَّا نَقْعُدُ مِنْهَا مَقَاعِدَ لِلسَّمْعِ ؕ فَمَنْ يَّسْتَمِعِ الْاٰنَ يَجِدْ لَهٗ شِهَابًا رَّصَدًا ﴿١٠﴾

१०. "तथा हामी त्यसका केही (स्थानहरू)मा कुरा सुन्नका निम्ति बस्ने गर्थ्यौं । परन्तु अब जसले सुन्छ त्यसले एउटा उल्कालाई उसमाथि आक्रमण गर्न घात लगाएर बसेको पाउनेछ ।

وَّاَنَّا لَا نَدْرِيْٓ اَشَرٌّ اُرِيْدَ بِمَنْ فِى الْاَرْضِ اَمْ اَرَادَ بِهِمْ رَبُّهُمْ رَشَدًا ﴿١١﴾

११. "तथा पृथ्वीका निवासीहरूका निम्ति कुनै अमङ्गलपूर्ण निर्णय गरिएको छ अथवा तिनीहरूका प्रतिपालकले तिनीहरूका निम्ति कुनै मङ्गलमय निर्णय नै गरेका छन् भन्ने कुरा हामी जान्दैनौं ।

وَّاَنَّا مِنَّا الصّٰلِحُوْنَ وَمِنَّا دُوْنَ ذٰلِكَ ؕ كُنَّا طَرَآئِقَ قِدَدًا ﴿١٢﴾

१२. "तथा हामीमध्ये केही व्यक्तिहरू धर्मनिष्ठ छन् भने, अन्य केही चाहिँ त्यस विपरीत रहेका छन्, तथा हामी भिन्न भिन्न मत अवलम्बन गर्ने सम्प्रदायहरू रहेका छौं

وَّاَنَّا ظَنَنَّآ اَنْ لَّنْ نُّعْجِزَ اللّٰهَ فِى الْاَرْضِ وَلَنْ نُّعْجِزَهٗ هَرَبًا ﴿١٣﴾

१३. "तथा पृथ्वीमा हामी अल्लाह(को योजना)लाई असफल गर्न सक्नेछैनौं, न त हामी भागेर उनीबाट बच्न नै सक्नेछौं भन्ने कुरालाई हामी जान्दछौं ।

وَّاَنَّا لَمَّا سَمِعْنَا الْهُدٰٓى اٰمَنَّا بِهٖ ؕ فَمَنْ يُّؤْمِنْۢ بِرَبِّهٖ فَلَا يَخَافُ بَخْسًا وَّلَا رَهَقًا ﴿١٤﴾

१४. "तथा जब हामीले सन्मार्ग (तर्फ आह्वान गरेको) सुन्यौं, त्यसप्रति हामीले विश्वास गऱ्यौं । तथा जसले आफ्ना प्रतिपालकप्रति विश्वास गर्छ त्यसलाई कुनै घाटा अथवा अन्याय हुने डर रहनेछैन ।

وَّاَنَّا مِنَّا الْمُسْلِمُوْنَ وَمِنَّا الْقٰسِطُوْنَ ؕ فَمَنْ اَسْلَمَ فَاُولٰٓئِكَ تَحَرَّوْا رَشَدًا ﴿١٥﴾

१५. "तथा हामीमध्ये केही (अल्लाहका) आज्ञाकारी व्यक्तिहरू छन् र हामीमध्ये केही

व्यक्तिहरू भने (सन्मार्गबाट) विचलित भएका छन् ।" तथा जुन व्यक्तिहरू (अल्लाहका) आज्ञाकारी बन्छन् – तिनीहरू नै वस्तुतः सन्मार्गको खोजी गर्ने व्यक्तिहरू रहेका छन् ।

१६. तथा जुन व्यक्तिहरू (सन्मार्गबाट) विचलित हुन्छन्, तिनीहरू नै नर्कका इन्धन बन्न पुग्छन् ।

وَأَمَّا الْقَاسِطُونَ فَكَانُوا لِجَهَنَّمَ حَطَبًا ﴿١٥﴾

१७. तथा यदि तिनीहरू (उचित) मार्गमा कायम रहेमा हामी अवश्य तिनीहरूलाई प्रशस्त पिउने पानी प्रदान गर्नेछौं,

وَأَنْ لَوِ اسْتَقَامُوا عَلَى الطَّرِيقَةِ لَأَسْقَيْنَاهُمْ مَاءً غَدَقًا ﴿١٦﴾

१८. ताकि त्यसद्वारा हामी तिनीहरूलाई जाँच्न सकौं । तथा जो व्यक्ति आफ्ना प्रतिपालकको स्मरणबाट विमुख हुन्छ– त्यसलाई उनले अत्याधिक कठोर दण्डतर्फ धकेल्ने छन् ।

لِنَفْتِنَهُمْ فِيهِ ۚ وَمَنْ يُعْرِضْ عَنْ ذِكْرِ رَبِّهِ يَسْلُكْهُ عَذَابًا صَعَدًا ﴿١٧﴾

१९. तथा (सम्पूर्ण) उपासना गृहहरू अल्लाहकै रहेका छन्, त्यसकारण त्यहाँ अल्लाहबाहेक अन्य कसैलाई नपुकार ।

وَأَنَّ الْمَسَاجِدَ لِلَّهِ فَلَا تَدْعُوا مَعَ اللَّهِ أَحَدًا ﴿١٨﴾

२०. तथा जब अल्लाहका सेवक उनको उपासनाका निम्ति उभिन्छन्, तिनीहरू उनीमाथि त्यसरी झम्टिन्छन् जसबाट उनको श्वासै रोकिन लाग्छ ।

وَأَنَّهُ لَمَّا قَامَ عَبْدُ اللَّهِ يَدْعُوهُ كَادُوا يَكُونُونَ عَلَيْهِ لِبَدًا ﴿١٩﴾

२१. तिमी भन, "म ता केवल आफ्नै प्रतिपालकलाई पुकार्छु, तथा कसैलाई उनको भागीदार बनाउँदिन,"

قُلْ إِنَّمَا أَدْعُو رَبِّي وَلَا أُشْرِكُ بِهِ أَحَدًا ﴿٢٠﴾

२२. तिमी भन, "ममा तिमीहरूको हानि गर्ने अथवा लाभ पुऱ्याउने सामर्थ्य छैन ।"

قُلْ إِنِّي لَا أَمْلِكُ لَكُمْ ضَرًّا وَلَا رَشَدًا ﴿٢١﴾

२३. तिमी भन, "निश्चय नै अल्लाहविरुद्ध कसैले मलाई संरक्षण दिन सक्दैन, न त उनलाई छाडी मैले कुनै आश्रयस्थल पाउन सक्नेछु ।

قُلْ إِنِّي لَنْ يُجِيرَنِي مِنَ اللَّهِ أَحَدٌ وَلَنْ أَجِدَ مِنْ دُونِهِ مُلْتَحَدًا ﴿٢٢﴾

२४. (मेरो जिम्मेवारी ता) केवल अल्लाहको (आकाशवाणी) तथा उनका सन्देशहरूलाई पुऱ्याउनु रहेको छ ।" तथा जसले अल्लाह र उनका सन्देशवाहकको आदेश मान्दैनन्, तिनीहरूलाई नर्कको अग्नि मिल्नेछ, जहाँ तिनीहरू धेरै लामो समयसम्म बसोबास गर्नेछन् ।

إِلَّا بَلَٰغًا مِّنَ ٱللَّهِ وَرِسَٰلَٰتِهِۦ ۚ وَمَن يَعْصِ ٱللَّهَ وَرَسُولَهُۥ فَإِنَّ لَهُۥ نَارَ جَهَنَّمَ خَٰلِدِينَ فِيهَآ أَبَدًا ﴿٢٣﴾

२५. तिनीहरूले तिनीहरूको प्रतिश्रुत कुरोलाई नदेखुञ्जेलसम्म (निरन्तर अविशवास गर्दै जानेछन्) तथा सहयोगीको आधारमा कोचाहिँ अधिक दुर्बल छ र सङ्ख्याको आधारमा को अल्पसंख्यक रहेको छ भन्ने कुरा तिनीहरूले शीघ्र नै जान्नेछन्

حَتَّىٰٓ إِذَا رَأَوْا۟ مَا يُوعَدُونَ فَسَيَعْلَمُونَ مَنْ أَضْعَفُ نَاصِرًا وَأَقَلُّ عَدَدًا ﴿٢٤﴾

२६. तिमी भन, 'तिमीहरूको प्रतिश्रुत समय अति निकट छ अथवा मेरा प्रतिपालकले त्यसका निम्ति एउटा लामो समय निर्धारित गरेका छन् भन्ने कुराको मलाई केही ज्ञान छैन ।"

قُلْ إِنْ أَدْرِىٓ أَقَرِيبٌ مَّا تُوعَدُونَ أَمْ يَجْعَلُ لَهُۥ رَبِّىٓ أَمَدًا ﴿٢٥﴾

२७. (उनी) अदृश्यका कुराहरूका ज्ञाता (रहेका छन्); तथा उनले आफ्नो गुप्त (अदृश्य) राज्यमाथि (कसैलाई) प्रतिपालकत्व प्रदान गर्दैनन्,

عَٰلِمُ ٱلْغَيْبِ فَلَا يُظْهِرُ عَلَىٰ غَيْبِهِۦٓ أَحَدًا ﴿٢٦﴾

२८. सिवाय त्यो व्यक्ति, जसलाई उनले आफ्नो सन्देशवाहक(स्वरूप) निर्वाचित गर्छन् तथा त्यसका अघि र त्यसका पछि सन्तरीस्वरूप (फरिस्ताहरूको एउटा सुरक्षा दल) हिँड्ने गर्छ ।

إِلَّا مَنِ ٱرْتَضَىٰ مِن رَّسُولٍ فَإِنَّهُۥ يَسْلُكُ مِنۢ بَيْنِ يَدَيْهِ وَمِنْ خَلْفِهِۦ رَصَدًا ﴿٢٧﴾

२९. ताकि तिनीहरूले (उनका सन्देशवाहकहरूले) आफ्ना प्रतिपालकका सन्देशहरू पुर्याएका छन् भन्ने कुरा उनले जान्न सकुन् । तथा तिनीहरूसित रहेका (सम्पूर्ण) वस्तुहरूलाई उनले आफ्नो दिव्यदृष्टिअन्तर्गत राख्छन् । तथा सम्पूर्ण वस्तुहरूलाई उनले गणना गरेर राख्ने गर्छन् ।

لِّيَعْلَمَ أَن قَدْ أَبْلَغُوا۟ رِسَٰلَٰتِ رَبِّهِمْ وَأَحَاطَ بِمَا لَدَيْهِمْ وَأَحْصَىٰ كُلَّ شَىْءٍ عَدَدًا ﴿٢٨﴾

سُوْرَةُ الْمُزَّمِّلِ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ إِحْدَى وَعِشْرُوْنَ آيَةً وَّرُكُوْعَانِ

## अल्-मुज्ज़ाम्मिल
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयाल, अल्लाहको नाममा ।

يٰۤاَيُّهَا الْمُزَّمِّلُ ①

२. हे (स्वयमलाई) चादरले बेरेका व्यक्ति

قُمِ الَّيْلَ اِلَّا قَلِيْلًا ②

३. रातको केही अंशबाहेक त्यसमा (उपासनार्थ) खडा हुने गर–

نِّصْفَهٗۤ اَوِ انْقُصْ مِنْهُ قَلِيْلًا ③

४. त्यसको आधी, अथवा त्यो भन्दा केही समय कम गर,

اَوْ زِدْ عَلَيْهِ وَرَتِّلِ الْقُرْاٰنَ تَرْتِيْلًا ④

५. अथवा त्यो भन्दा केही (समय) वृद्धि गर– तथा विस्तार विस्तारै र ध्यानपूर्वक कुरानको पाठ गर्ने गर ।

اِنَّا سَنُلْقِيْ عَلَيْكَ قَوْلًا ثَقِيْلًا ⑤

६. वस्तुतः हामी तिमीलाई एउटा बोझिल वाणीको दायित्व भार दिइरहेछौं ।

اِنَّ نَاشِئَةَ الَّيْلِ هِيَ اَشَدُّ وَطْاً وَّاَقْوَمُ قِيْلًا ⑥

७. वस्तुतः रात्रिसमयमा उठ्ने कार्य अहम्लाई) दमन गर्ने एउटा अति गुणकारी (साधन रहेको छ तथा (प्रार्थनाका) शब्दहरूलाई फलदायी तुल्याउने सम्बन्धमा (पनि) अति प्रभावकारी (साधनस्वरूप) रहेको छ ।

اِنَّ لَكَ فِى النَّهَارِ سَبْحًا طَوِيْلًا ⑦

८. दिनको समयमा निस्सन्देह तिम्रो लामो व्यस्तता रहने गर्छ ।

وَاذْكُرِ اسْمَ رَبِّكَ وَتَبَتَّلْ اِلَيْهِ تَبْتِيْلًا ⑧

९. अतः तिमी आफ्ना प्रतिपालकको नामको स्मरण गर, तथा (स्वयम्लाई) पूर्णरूपमा उनीप्रति समर्पण गर ।

رَبُّ الْمَشْرِقِ وَالْمَغْرِبِ لَاۤ اِلٰهَ اِلَّا هُوَ فَاتَّخِذْهُ وَكِيْلًا ⑨

१०. (उनी) पूर्व र पश्चिमका प्रतिपालक हुन्; उनीबाहेक अन्य कोही उपास्य छैन; अतः; तिमी उनैलाई (आफ्ना) संरक्षक

बनाउ ।

وَاصْبِرْ عَلٰى مَا يَقُوْلُوْنَ وَاهْجُرْهُمْ هَجْرًا جَمِيْلًا ⑪

११. तथा तिनीहरूका सम्पूर्ण कुराहरू धैर्यतापूर्वक सहन गर; तथा शिष्टताका साथ तिनीहरूबाट अलग रहने गर ।

وَذَرْنِيْ وَالْمُكَذِّبِيْنَ اُولِي النَّعْمَةِ وَمَهِّلْهُمْ قَلِيْلًا ⑫

१२. सुख-सम्पत्तिका धनी ती (सत्यका) अस्वीकारीहरूसित मलाई एक्लै छाडिदेऊ, तथा तिनीहरूलाई केही अवसर देउ ।

اِنَّ لَدَيْنَاۤ اَنْكَالًا وَّجَحِيْمًا ⑬

१३. हामीसित निश्चयपूर्वक (बोझिल) बेडीहरू र अग्नि रहेको छ;

وَّطَعَامًا ذَا غُصَّةٍ وَّعَذَابًا اَلِيْمًا ⑭

१४. तथा घाँटीमा अड्कने खाद्य तथा पीडादायक दण्ड –

يَوْمَ تَرْجُفُ الْاَرْضُ وَالْجِبَالُ وَكَانَتِ الْجِبَالُ كَثِيْبًا مَّهِيْلًا ⑮

१५. जुनदिन पृथ्वी र पर्वतहरू काँप्नेछन्, तथा पर्वतहरू खण्ड विखण्ड भएका टिल्लाहरूसदृश हुनेछन् ।

اِنَّاۤ اَرْسَلْنَاۤ اِلَيْكُمْ رَسُوْلًا ۙ شَاهِدًا عَلَيْكُمْ كَمَاۤ اَرْسَلْنَاۤ اِلٰى فِرْعَوْنَ رَسُوْلًا ⑯

१६. वस्तुतः हामीले तिमीहरूतर्फ एकजना यस्ता सन्देशवाहक पठाएकाछौं जो तिमीहरूमाथि साक्षी रहेका छन्, जसरी हामीले फिरौनतर्फ एकजना सन्देशवाहक पठाएका थियौं ।

فَعَصٰى فِرْعَوْنُ الرَّسُوْلَ فَاَخَذْنٰهُ اَخْذًا وَّبِيْلًا ⑰

१७. परन्तु फिरौनले सन्देशवाहकको अवज्ञा गऱ्यो, अतः हामीले उसलाई एउटा भयानक दण्डद्वारा समात्यौं ।

فَكَيْفَ تَتَّقُوْنَ اِنْ كَفَرْتُمْ يَوْمًا يَّجْعَلُ الْوِلْدَانَ شِيْبًا ⑱

१८. यदि तिमीहरूले अविश्वास गऱ्यौ भने, तिमीहरूले त्यो बालकहरूको कपाललाई खैरो रङ्गमा परिवर्तन गर्ने दिनबाट स्वयम्लाई कसरी सुरक्षित राख्नेछौ त?

اِۨلسَّمَآءُ مُنْفَطِرٌۢ بِهٖ ؕ كَانَ وَعْدُهٗ مَفْعُوْلًا ⑲

१९. (त्यस दिन) आकाश पूर्णरूपमा फुट्नेछ (तथा) उनको वचन पूर्ण हुनेछ ।

إِنَّ هَٰذِهِۦ تَذْكِرَةٌ ۖ فَمَن شَآءَ ٱتَّخَذَ إِلَىٰ رَبِّهِۦ سَبِيلًا ﴿٢٠﴾

२०. यो निश्चयपूर्वक एउटा उपदेश हो । अतः जसले चाहन्छ उसले आफ्ना प्रतिपालकतर्फ जाने मार्ग अवलम्बन गरोस्

إِنَّ رَبَّكَ يَعْلَمُ أَنَّكَ تَقُومُ أَدْنَىٰ مِن ثُلُثَيِ ٱلَّيْلِ وَنِصْفَهُۥ وَثُلُثَهُۥ وَطَآئِفَةٌ مِّنَ ٱلَّذِينَ مَعَكَ ۚ وَٱللَّهُ يُقَدِّرُ ٱلَّيْلَ وَٱلنَّهَارَ ۚ عَلِمَ أَن لَّن تُحْصُوهُ فَتَابَ عَلَيْكُمْ ۖ فَٱقْرَءُوا۟ مَا تَيَسَّرَ مِنَ ٱلْقُرْءَانِ ۚ عَلِمَ أَن سَيَكُونُ مِنكُم مَّرْضَىٰ ۙ وَءَاخَرُونَ يَضْرِبُونَ فِى ٱلْأَرْضِ يَبْتَغُونَ مِن فَضْلِ ٱللَّهِ ۙ وَءَاخَرُونَ يُقَٰتِلُونَ فِى سَبِيلِ ٱللَّهِ ۖ فَٱقْرَءُوا۟ مَا تَيَسَّرَ مِنْهُ ۚ وَأَقِيمُوا۟ ٱلصَّلَوٰةَ وَءَاتُوا۟ ٱلزَّكَوٰةَ وَأَقْرِضُوا۟ ٱللَّهَ قَرْضًا حَسَنًا ۚ وَمَا تُقَدِّمُوا۟ لِأَنفُسِكُم مِّنْ خَيْرٍ تَجِدُوهُ عِندَ ٱللَّهِ هُوَ خَيْرًا وَأَعْظَمَ أَجْرًا ۚ وَٱسْتَغْفِرُوا۟ ٱللَّهَ ۖ إِنَّ ٱللَّهَ غَفُورٌ رَّحِيمٌۢ ﴿٢١﴾

२१. तिमी रातको प्राय दुईतिहाइ अंश (प्रार्थनार्थ) खडा रहने गर्छौ तथा (कहिलेकाहीँ) रातको आधी अंश अथवा त्यसको तेस्रो अंश, तथा तिम्रो साथीहरूमध्ये एउटा जमात पनि, भन्ने कुरालाई अल्लाहले निश्चयपूर्वक जान्दछन् । तथा रात्रि र दिनको परिमाण अल्लाहले निर्धारण गर्छन् । तिमीहरूले (त्यसको टुङ्गो) लगाउन सक्दैनौ भन्ने कुरालाई उनले जान्दछन्, त्यसैकारण उनले तिमीहरूमाथि कृपादृष्टि गरेका छन् । अतः तिमीहरू (आफ्नो) सुविधाअनुसार कुरानबाट जतिसक्दो पाठ गर्ने गर । तिमीहरूमध्ये केही व्यक्तिहरू बिमार हुन सक्छन् तथा केही अन्यहरू अल्लाहको अनुग्रह प्राप्तिका निम्ति पृथ्वीमा यात्रा गर्छन्, र अन्य केही व्यक्तिहरू अल्लाहको मार्गमा युद्ध गर्छन् भन्ने कुरालाई उनले जान्दछन् । अतः तिमीहरू (आफ्नो) सुविधाअनुसार त्यसबाट पाठ गर्ने गर, तथा नमाज अनुष्ठान गर र जगात दिने गर, तथा अल्लाहलाई एउटा उत्तम ऋण प्रदान गर । तथा तिमीहरू आफ्नो आत्माका निम्ति जुन पुण्य आफूभन्दा अगाडि पठाउनेछौ, त्यसलाई तिमीहरूले अल्लाहका जुनाफमा प्राप्त गर्नेछौ । त्यो उत्तम र ठूलो प्रतिदानस्वरूप रहेको छ । तथा अल्लाहसित क्षमायाचना गर । अल्लाह निश्चयपूर्वक परम क्षमाशील, परम करुणाशील छन् ।

سُورَةُ الْمُدَّثِّرِ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ سَبْعٌ وَّخَمْسُونَ اٰيَةً وَّرُكُوْعَانِ

## अल्-मुद्दस्सिर
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

يٰٓاَيُّهَا الْمُدَّثِّرُ ②

२. ए (स्वयम्लाई आफ्नो बर्साती कोटले) ढाकेर राखेका व्यक्ति !

قُمْ فَاَنْذِرْ ③

३. उठ र सावधान गर ।

وَرَبَّكَ فَكَبِّرْ ④

४. तथा आफ्ना प्रतिपालकको महानता वर्णन गर ।

وَثِيَابَكَ فَطَهِّرْ ⑤

५. तथा आफ्ना वस्त्रहरू* परिष्कार गर,

وَالرُّجْزَ فَاهْجُرْ ⑥

६. तथा अपवित्रतालाई तिमी परित्याग गर,

وَلَا تَمْنُنْ تَسْتَكْثِرُ ⑦

७. तथा अधिक (बदला) प्राप्तिको आशामा अनुग्रह नगर,

وَلِرَبِّكَ فَاصْبِرْ ⑧

८. तथा आफ्ना प्रतिपालकको प्रसन्नता प्राप्तिका निम्ति धैर्यतापूर्वक सहन गर ।

فَاِذَا نُقِرَ فِى النَّاقُوْرِ ⑨

९. तथा जब बिगुल बजाइनेछ,

---

* सियाबक ( ثِيَابَكَ) शब्दको अर्थ हृदय हुन सक्छ । परन्तु त्यसलाई रूपकात्मक रूपमा लिइएमा मात्र । परन्तु समस्या के रहेको छ भने सियाब ( ثِيَاب) शब्दको शाब्दिक अर्थ कपडाहरू अथवा वस्त्रहरू हुन्छ । अतः यदि कसैले यसलाई रूपकात्मक रूपमा प्रयोग गरेमा यसको सम्भा व्यभावार्थ (व्याख्या) केवल हृदयमात्र हुनेछैन । सम्भवतः उक्त रचनामा (प्रसङ्गमा) सियाबक ( ثِيَابَكَ) शब्दले पवित्र नबी (उनीप्रति शान्ति होस्)का सङ्गीहरू (सहचरहरू) तथा उनका अन्यान्य निकटस्थ व्यक्तिहरू बुझाउँदछ । यहाँ उक्त अनुवाद जुन शाब्दिकरूपमा रहेको छ, यसले पाठकवर्गलाई व्याख्याकरणको एउटा विस्तृत चयनमार्ग प्रदान गर्छ ।

فَذٰلِكَ يَوْمَئِذٍ يَّوْمٌ عَسِيْرٌ ۝١٠

१०. त्यो दिन एउटा अत्यन्त विपत्तिपूर्ण दिन हुनेछ ।

عَلَى الْكٰفِرِيْنَ غَيْرُ يَسِيْرٍ ۝١١

११. अविश्वासीहरूका निम्ति त्यो सरल हुनेछैन ।

ذَرْنِيْ وَمَنْ خَلَقْتُ وَحِيْدًا ۝١٢

१२. जसलाई मैले एक्लो सृष्टि गरेको थिएँ त्यससित निब्टन मलाई छाडिदेऊ ,

وَّجَعَلْتُ لَهٗ مَالًا مَّمْدُوْدًا ۝١٣

१३. तथा मैले त्यसलाई प्रशस्त सम्पत्ति प्रदान गरेको थिएँ,

وَّبَنِيْنَ شُهُوْدًا ۝١٤

१४. तथा यस्ता पुत्रहरू, जो उसका साथ-साथ रहने गर्थे,

وَّمَهَّدْتُّ لَهٗ تَمْهِيْدًا ۝١٥

१५. तथा मैले त्यसका निम्ति सम्पूर्ण आवश्यकीय वस्तुहरूको व्यवस्था गरिदिएको थिएँ ।

ثُمَّ يَطْمَعُ اَنْ اَزِيْدَ ۝١٦

१६. अझपनि मैले त्योभन्दा अधिक (उसलाई) दिए हुन्थ्यो भन्ने त्यो व्यक्ति चाहन्छ ।

كَلَّا ؕ اِنَّهٗ كَانَ لِاٰيٰتِنَا عَنِيْدًا ۝١٧

१७. हुनै सक्दैन ! किनभने त्यसले हाम्रा चिह्नहरूलाई अस्वीकार गर्दै आएको छ ।

سَاُرْهِقُهٗ صَعُوْدًا ۝١٨

१८. शीघ्र नै म त्यसलाई निरन्तर वृद्धि हुँदै जाने सङ्कटद्वारा दण्डित गर्नेछु ।

اِنَّهٗ فَكَّرَ وَقَدَّرَ ۝١٩

१९. हेर ! त्यसले ध्यानपूर्वक सुन्यो र अनुमान गऱ्यो !

فَقُتِلَ كَيْفَ قَدَّرَ ۝٢٠

२०. त्यसको सत्यनाश होस् ! त्यसले कस्तो अनुमान लगायो !

ثُمَّ قُتِلَ كَيْفَ قَدَّرَ ۝٢١

२१. (पुनः) त्यसको सत्यनाश होस् ! त्यसले कस्तो अनुमान लगायो !

ثُمَّ نَظَرَ ۝٢٢

२२. पुनः त्यसले (ध्यानपूर्वक) हेऱ्यो,

ثُمَّ عَبَسَ وَبَسَرَ ﴿٢٢﴾

२३. त्यसपछि उसले आँखा तर्‍यो र मुख बिगार्‍यो

ثُمَّ أَدْبَرَ وَاسْتَكْبَرَ ﴿٢٣﴾

२४. त्यसपछि पिठ्यूँ फेर्‍यो र अहङ्कार गर्न लाग्यो ।

فَقَالَ إِنْ هَٰذَا إِلَّا سِحْرٌ يُؤْثَرُ ﴿٢٤﴾

२५. तथा भन्यो, “यो ता परम्परागत चल्दै आएको जादु हो !

إِنْ هَٰذَا إِلَّا قَوْلُ الْبَشَرِ ﴿٢٥﴾

२६. यो ता मानिसले नै बनाएको कुरो हो ।”

سَأُصْلِيهِ سَقَرَ ﴿٢٦﴾

२७. शीघ्र नै हामी त्यसलाई ‘सक़र’मा हाल्नेछौं ।

وَمَا أَدْرَاكَ مَا سَقَرُ ﴿٢٧﴾

२८. ‘सक़र’ के (वस्तु) हो भन्ने कुरा तिमीलाई कसरी थाहा हुन्छ र?

لَا تُبْقِي وَلَا تَذَرُ ﴿٢٨﴾

२९. त्यसले केही बाँकी राख्दैन तथा कुनै वस्तुलाई (हातबाट) जान दिँदैन ।

لَوَّاحَةٌ لِّلْبَشَرِ ﴿٢٩﴾

३०. त्यसले छाला जलाउँछ

عَلَيْهَا تِسْعَةَ عَشَرَ ﴿٣٠﴾

३१. त्यसमाथि उन्नाइसजना (देवदूतहरू) तैनाथ छन् ।

وَمَا جَعَلْنَا أَصْحَابَ النَّارِ إِلَّا مَلَائِكَةً ۙ وَمَا جَعَلْنَا عِدَّتَهُمْ إِلَّا فِتْنَةً لِّلَّذِينَ كَفَرُوا لِيَسْتَيْقِنَ الَّذِينَ أُوتُوا الْكِتَابَ وَيَزْدَادَ الَّذِينَ آمَنُوا إِيمَانًا ۙ وَلَا يَرْتَابَ الَّذِينَ أُوتُوا الْكِتَابَ وَالْمُؤْمِنُونَ ۙ وَلِيَقُولَ الَّذِينَ فِي قُلُوبِهِم مَّرَضٌ وَالْكَافِرُونَ مَاذَا أَرَادَ اللَّهُ بِهَٰذَا مَثَلًا ۚ كَذَٰلِكَ يُضِلُّ اللَّهُ مَن يَشَاءُ وَيَهْدِي مَن يَشَاءُ ۚ وَمَا يَعْلَمُ جُنُودَ رَبِّكَ إِلَّا هُوَ ۚ وَمَا هِيَ إِلَّا ذِكْرَىٰ لِلْبَشَرِ ﴿٣١﴾

३२. तथा केवल फरिस्ताहरूलाई नै हामीले अग्निका पहरेदार नियुक्त गरेका छौं । तथा केवल अविश्वासीहरूलाई जाँच्नका निम्ति हामीले तिनीहरूको सङ्ख्या निर्धारित गरेका हौं, ताकि पुस्तकप्राप्त व्यक्तिहरूले विश्वास गरून्, तथा विश्वासीहरूको आस्था बढोस्, तथा पुस्तकप्राप्त व्यक्तिहरूले र साथै विश्वासीहरूले (पनि) सन्देह नगरून्, फलस्वरूप हृदयमा रोगरहेका व्यक्तिहरूले र अविश्वासीहरूले भन्नेछन्, “यस प्रकारको उदाहरण दिनुमा अल्लाहको के तात्पर्य रहेको छ?” यसै प्रकार अल्लाह

जसलाई चाहन्छन् पथभ्रष्ट घोषित गर्छन् तथा जसलाई चाहन्छन् सन्मार्ग प्रदर्शन गर्छन् । तथा तिम्रा प्रतिपालकका लस्करलाई उनीबाहेक कसैले जान्दैनन् । तथा यो मानवजातिका निम्ति केवल एउटा उपदेश रहेको छ ।

كَلَّا وَالْقَمَرِ ﴿٣٢﴾

३२. होइन, (अपितु) चन्द्रमाको शपथ,

وَاللَّيْلِ إِذْ أَدْبَرَ ﴿٣٣﴾

३४. तथा रात्रिको (शपथ), जब त्यसको प्रत्यावर्तन हुन्छ,

وَالصُّبْحِ إِذَا أَسْفَرَ ﴿٣٤﴾

३५. तथा बिहानीको (शपथ), जब त्यो प्रकाशमय हुन्छ,

إِنَّهَا لَإِحْدَى الْكُبَرِ ﴿٣٥﴾

३६. वस्तुतः यो महा(विपत्तिहरू)मध्येको एउटा (विपत्ति) रहेको छ ।

نَذِيرًا لِّلْبَشَرِ ﴿٣٦﴾

३७. मानवजातिका निम्ति, एउटा चेतावनी,

لِمَن شَاءَ مِنكُمْ أَن يَتَقَدَّمَ أَوْ يَتَأَخَّرَ ﴿٣٧﴾

३८. तिमीहरूमध्ये त्यसको निम्ति जो अघि बढ्न अथवा पछि रहन चाहन्छ ।

كُلُّ نَفْسٍ بِمَا كَسَبَتْ رَهِينَةٌ ﴿٣٨﴾

३९. हरेक आत्मा उसको कमाइको धरोटस्वरूप रहेको छ;

إِلَّا أَصْحَابَ الْيَمِينِ ﴿٣٩﴾

४०. सिवाय ती दाँहिने हाततर्फका व्यक्तिहरूबाहेक।

فِي جَنَّاتٍ يَتَسَاءَلُونَ ﴿٤٠﴾

४१. (तिनीहरू) बगैंचामा परस्पर एक-अर्कासित प्रश्न गर्नेछन्

عَنِ الْمُجْرِمِينَ ﴿٤١﴾

४२. अपराधी व्यक्तिहरूका सम्बन्धमा ।

مَا سَلَكَكُمْ فِي سَقَرَ ﴿٤٢﴾

४३. "कुन वस्तुले तिमीहरूलाई 'सकर' (नर्क) भित्र पुऱ्यायो?"

قَالُوا لَمْ نَكُ مِنَ الْمُصَلِّينَ ﴿٤٣﴾

४४. तिनीहरूले भन्नेछन्, "हामी नमाज अनुष्ठान गर्दैनथ्यौं,

وَلَمْ نَكُ نُطْعِمُ الْمِسْكِيْنَ ﴿٤٥﴾

४५. न त हामी दरिद्रहरूलाई भोजन गराउने गर्थ्यौं ।

وَكُنَّا نَخُوْضُ مَعَ الْخَآئِضِيْنَ ﴿٤٦﴾

४६. तथा हामी आपत्तिजनक कुराहरूमा व्यस्त रहने व्यक्तिहरूसित मिलेर आपत्तिजनक कुरा गर्नमै लिप्त रहने गर्थ्यौं

وَكُنَّا نُكَذِّبُ بِيَوْمِ الدِّيْنِ ﴿٤٧﴾

४७. तथा हामी (अन्तिम) निर्णयको दिनको अस्वीकार गर्ने गर्थ्यौं,

حَتّٰۤى اَتٰىنَا الْيَقِيْنُ ﴿٤٨﴾

४८. त्यसै अवस्थामा हामीमाथि मृत्युघडी आयो ।"

فَمَا تَنْفَعُهُمْ شَفَاعَةُ الشّٰفِعِيْنَ ﴿٤٩﴾

४९. अतःतिनीहरूलाई मध्यस्थकर्ताहरूको मध्यस्थताले केही लाभ पुऱ्याउने छैन ।

فَمَا لَهُمْ عَنِ التَّذْكِرَةِ مُعْرِضِيْنَ ﴿٥٠﴾

५०. तिनीहरूलाई के भएको छ र तिनीहरू अब यस प्रकार उपदेशबाट विमुख भइरहेछन्,

كَاَنَّهُمْ حُمُرٌ مُّسْتَنْفِرَةٌ ﴿٥١﴾

५१. मानौं तिनीहरू डराएका गधाहरू हुन्

فَرَّتْ مِنْ قَسْوَرَةٍ ﴿٥٢﴾

५२. जो सिंहलाई देखेर भागिरहेछन्?

بَلْ يُرِيْدُ كُلُّ امْرِئٍ مِّنْهُمْ اَنْ يُّؤْتٰى صُحُفًا مُّنَشَّرَةً ﴿٥٣﴾

५३. होइन, (अपितु) तिनीहरूमध्ये हरेक व्यक्ति त्यसका हातमा (आकाशवाणीको) खुल्ला ताउहरू राखियोस् भन्ने चाहन्छ ।

كَلَّا ۚ بَلْ لَّا يَخَافُوْنَ الْاٰخِرَةَ ﴿٥٤﴾

५४. असम्भव ! वस्तुतः तिनीहरू परलोकप्रति डराउँदैनन् ।

كَلَّاۤ اِنَّهٗ تَذْكِرَةٌ ﴿٥٥﴾

५५. असम्भव ! यो ता एउटा उपदेश हो

فَمَنْ شَآءَ ذَكَرَهٗ ﴿٥٦﴾

५६. अतः ! जसले चाहन्छ यसलाई स्मरण गरोस् ।

وَمَا يَذْكُرُوْنَ اِلَّاۤ اَنْ يَّشَآءَ اللّٰهُ ۚ هُوَ اَهْلُ التَّقْوٰى وَاَهْلُ الْمَغْفِرَةِ ﴿٥٧﴾

५७. तथा अल्लाहको इच्छाबिना तिनीहरूले स्मरण गर्नेछैनन् । (केवल) उनी नै डराउन योग्य छन् तथा क्षमादान गर्ने अधिकार (केवल) उनकै रहेको छ ।




## अल्-कियामाः
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ﴿١﴾

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

لَآ اُقْسِمُ بِيَوْمِ الْقِيٰمَةِ ﴿٢﴾

२. होइन, अपितु म पुनरुत्थानको दिनको शपथ खान्छु ।

وَلَآ اُقْسِمُ بِالنَّفْسِ اللَّوَّامَةِ ﴿٣﴾

३. तथा म त्यो स्वयम्लाई बारम्बार धिक्कार्ने आत्माको शपथ खान्छु ।

اَيَحْسَبُ الْاِنْسَانُ اَلَّنْ نَّجْمَعَ عِظَامَهٗ ﴿٤﴾

४. के हामीले उसका हड्डीहरू एकत्रित गर्नेछैनौं भन्ने मानिसको धारणा रहेको छ?

بَلٰى قٰدِرِيْنَ عَلٰٓى اَنْ نُّسَوِّيَ بَنَانَهٗ ﴿٥﴾

५. हो ! हामीमा त्यसका औंलाका टुप्पाहरूलाई पुनर्स्थापना गर्ने सामर्थ्य छ ।

بَلْ يُرِيْدُ الْاِنْسَانُ لِيَفْجُرَ اَمَامَهٗ ﴿٦﴾

६. परन्तु मानिस पहिला झैं निरन्तर पापमा लिप्त रहन चाहन्छ ।

يَسْـَٔلُ اَيَّانَ يَوْمُ الْقِيٰمَةِ ﴿٧﴾

७. त्यो सोध्ने गर्छ, "पुनरुत्थानको दिन कहिले आउने हो?"

فَاِذَا بَرِقَ الْبَصَرُ ﴿٨﴾

८. जब नेत्रहरू तिरमिराउने छन्,

وَخَسَفَ الْقَمَرُ ﴿٩﴾

९. तथा चन्द्रमामा ग्रहण लाग्नेछ,

وَجُمِعَ الشَّمْسُ وَالْقَمَرُ ﴿١٠﴾

१०. तथा सूर्य र चन्द्र दुबैलाई एकत्रित गरिनेछ,

يَقُوْلُ الْاِنْسَانُ يَوْمَئِذٍ اَيْنَ الْمَفَرُّ ﴿١١﴾

११. त्यसदिन मानिसले भन्नेछ, भागेर कहाँ जान सकिन्छ र?"

كَلَّا لَا وَزَرَ ﴿١٢﴾

१२. होइन, (अपितु)बच्ने कुनै स्थान छैन !

اِلٰى رَبِّكَ يَوْمَئِذِ ِۨالْمُسْتَقَرُّ ﴿١٣﴾

१३. त्यसदिन (केवल) तिम्रा प्रतिपालकका

जुनाफमा आश्रयस्थल रहने छ ।

يُنَبَّؤُا الْإِنسَانُ يَوْمَئِذٍ بِمَا قَدَّمَ وَأَخَّرَ ﴿١٣﴾

१४. त्यसदिन मानिसलाई उसले आफूभन्दा अगाडि पठाएका (कर्महरू) र पछि छाडेर आएका (कर्महरू)बारे अवगत गराइनेछ ।

بَلِ الْإِنسَانُ عَلَىٰ نَفْسِهِ بَصِيرَةٌ ﴿١٤﴾

१५. होइन, (अपितु) मानिसले स्वयम्‌लाई राम्ररी जान्दछ ।

وَلَوْ أَلْقَىٰ مَعَاذِيرَهُ ﴿١٥﴾

१६. चाहे त्यसले कति नै स्पष्टीकरण किन नदेओस् ।

لَا تُحَرِّكْ بِهِ لِسَانَكَ لِتَعْجَلَ بِهِ ﴿١٦﴾

१७. यसलाई चाँडोभन्दा चाँडो (संरक्षण) गर्ने इच्छाले तिमी यस (अकाशवाणी) सितै आफ्नो जिब्रोलाई नघुमाऊ ।

إِنَّ عَلَيْنَا جَمْعَهُ وَقُرْآنَهُ ﴿١٧﴾

१८. यसलाई जम्मा गर्ने तथा यसलाई पढेर सुनाउने उत्तरदायित्व निशचयपूर्वक हाम्रो रहेको छ ।

فَإِذَا قَرَأْنَاهُ فَاتَّبِعْ قُرْآنَهُ ﴿١٨﴾

१९. अतः जब हामी यसको पाठ गर्छौं, त्यसपछि तिमी त्यसलाई पढ्ने गर ।

ثُمَّ إِنَّ عَلَيْنَا بَيَانَهُ ﴿١٩﴾

२०. त्यसपछि त्यसको व्याख्या गर्नु (पनि) हाम्रै (उत्तरदायित्व) रहेको छ ।

كَلَّا بَلْ تُحِبُّونَ الْعَاجِلَةَ ﴿٢٠﴾

२१. होइन, (अपितु) तिमीहरू हातहातै प्राप्त हुने (वस्तु) लाई नै मनपराउँछौ;

وَتَذَرُونَ الْآخِرَةَ ﴿٢١﴾

२२. तथा परलोकको पर्वाह गर्दैनौ ।

وُجُوهٌ يَوْمَئِذٍ نَّاضِرَةٌ ﴿٢٢﴾

२३. केही मुहारहरू त्यसदिन उज्ज्वल हुनेछन्,

إِلَىٰ رَبِّهَا نَاظِرَةٌ ﴿٢٣﴾

२४. आफ्ना प्रतिपालकतर्फ (कौतूहल पूर्वक) हेरिरहनेछन्;

وَوُجُوهٌ يَوْمَئِذٍ بَاسِرَةٌ ﴿٢٤﴾

२५. तथा केही मुहारहरू त्यसदिन उदास

देखिनेछन्,

تَظُنُّ اَنْ يُّفْعَلَ بِهَا فَاقِرَةٌ ﴿٢٦﴾

२६. एउटा कमर तोड्ने सङ्कट तिनीहरूमाथि आउनै लागिरहेछ भन्ने सोचाइमा रहनेछन् ।

كَلَّآ اِذَا بَلَغَتِ التَّرَاقِيَ ﴿٢٧﴾

२७. सुन ! जब (मर्नलागेको व्यक्तिको आत्मा) कण्ठमा आइपुग्नेछ,

وَقِيْلَ مَنْ رَاقٍ ﴿٢٨﴾

२८. तथा के भनिनेछ भने, "(त्यसलाई बचाउने) कोही तान्त्रिक छ?"

وَّظَنَّ اَنَّهُ الْفِرَاقُ ﴿٢٩﴾

२९. तथा वियोग (को घडी) यही नै हो भन्ने त्यसलाई पूर्ण विश्वास हुनेछ;

وَالْتَفَّتِ السَّاقُ بِالسَّاقِ ﴿٣٠﴾

३०. तथा एउटा पिँडुलोलाई अर्को पिँडुलोले रगेड्ने छ;

اِلٰى رَبِّكَ يَوْمَئِذِ الْمَسَاقُ ﴿٣١﴾

३१. त्यसदिन तिम्रा प्रतिपालकतर्फै जानु पर्नेछ ।

فَلَا صَدَّقَ وَلَا صَلّٰى ﴿٣٢﴾

३२. किनभने न त्यसले (सत्यलाई) स्वीकार गऱ्यो न त नमाज अनुष्ठान नै गऱ्यो;

وَلٰكِنْ كَذَّبَ وَتَوَلّٰى ﴿٣٣﴾

३३. अपितु (सत्यलाई) अस्वीकार गऱ्यो र आफ्नो पिठ्यूँ फेऱ्यो,

ثُمَّ ذَهَبَ اِلٰٓى اَهْلِهٖ يَتَمَطّٰى ﴿٣٤﴾

३४. त्यसपछि अहङ्कारपूर्ण चालका साथ आफ्ना नातेदारहरूतर्फ लाग्यो ।

اَوْلٰى لَكَ فَاَوْلٰى ﴿٣٥﴾

३५. तँमाथि धिक्कार छ ! पुनः धिक्कार छ !"

ثُمَّ اَوْلٰى لَكَ فَاَوْلٰى ﴿٣٦﴾

३६. "पुनः तँमाथि धिक्कार ! तथा पुनः धिक्कार !"

اَيَحْسَبُ الْاِنْسَانُ اَنْ يُّتْرَكَ سُدًى ﴿٣٧﴾

३७. के मानिसले त्यसलाई बेलगाम (घुम्न) छाडिने छ भन्ने ठानेको छ कि के हो?

اَلَمْ يَكُ نُطْفَةً مِّنْ مَّنِيٍّ يُّمْنٰى ۝٣٧

३८. के त्यो व्यक्ति एउटा दाखिल गरिएको वीर्यको थोपो थिएन र?

ثُمَّ كَانَ عَلَقَةً فَخَلَقَ فَسَوّٰى ۝٣٨

३९. त्यसपछि त्यो एउटा रक्तपिण्ड बन्न पुग्यो, त्यसपछि उनले त्यसलाई आकृति प्रदान गरे तथा (त्यसलाई) पूर्णता प्रदान गरे

فَجَعَلَ مِنْهُ الزَّوْجَيْنِ الذَّكَرَ وَ الْاُنْثٰى ۝٣٩

४०. तथा उनले त्यसबाट एउटा जोडी बनाए, अर्थात्, पुरुष जाति र स्त्री जातिस्वरूप ।

اَلَيْسَ ذٰلِكَ بِقٰدِرٍ عَلٰٓى اَنْ يُّحْيِيَ الْمَوْتٰى ۝٤٠

४१. के यस्ता(अल्लाह)मा मुर्दालाई जीवित गर्ने शक्ति छैन र?

سُوْرَةُ الدَّهْرِ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ اثْنَتَانِ وَّثَلٰثُوْنَ اٰيَةً وَّرُكُوْعَانِ

## अल्-दहर
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

هَلْ اَتٰى عَلَى الْاِنْسَانِ حِيْنٌ مِّنَ الدَّهْرِ لَمْ يَكُنْ شَيْـًٔا مَّذْكُوْرًا ②

२. मानिसमाथि एउटा यस्तो अवस्था अवश्य आइसकेको छ जब त्यो कुनै उल्लेखयोग्य वस्तु थिएन ।

اِنَّا خَلَقْنَا الْاِنْسَانَ مِنْ نُّطْفَةٍ اَمْشَاجٍ ۖ نَّبْتَلِيْهِ فَجَعَلْنٰهُ سَمِيْعًا ۢ بَصِيْرًا ③

३. हामीले मानिसलाई एउटा यस्तो मिश्रित वीर्यको थोपोबाट सृष्टि गऱ्यौं जसलाई हामी विभिन्न तरिकाले जाँच्ने गर्छौं; त्यसपछि हामीले उसलाई सुन्ने, देख्ने योग्य(प्राणी) बनायौं ।

اِنَّا هَدَيْنٰهُ السَّبِيْلَ اِمَّا شَاكِرًا وَّاِمَّا كَفُوْرًا ④

४. हामीले उसलाई मार्ग देखाइसकेका छौं, चाहे त्यो कृतज्ञ बनोस अथवा कृतघ्न

اِنَّآ اَعْتَدْنَا لِلْكٰفِرِيْنَ سَلٰسِلَا۠ وَاَغْلٰلًا وَّسَعِيْرًا ⑤

५. वस्तुतः अविश्वासी व्यक्तिहरूका निम्ति हामीले जञ्जीर र फलामका बेंडीहरू तथा प्रज्ज्वलित अग्नि बनाएका छौं ।

اِنَّ الْاَبْرَارَ يَشْرَبُوْنَ مِنْ كَاْسٍ كَانَ مِزَاجُهَا كَافُوْرًا ⑥

६. परन्तु पुण्यकर्मी व्यक्तिहरू कर्पूर मिश्रित प्याला पिउनेछन् –

عَيْنًا يَّشْرَبُ بِهَا عِبَادُ اللّٰهِ يُفَجِّرُوْنَهَا تَفْجِيْرًا ⑦

७. एउटा यस्तो मूल, जसबाट अल्लाहका सेवकहरू पिउने गर्छन् । एउटा शक्तिशाली फोहोरास्वरूप त्यसलाई तिनीहरू पृथ्वीबाट निकाल्नेछन् ।

يُوْفُوْنَ بِالنَّذْرِ وَيَخَافُوْنَ يَوْمًا كَانَ شَرُّهٗ مُسْتَطِيْرًا ⑧

८. तिनीहरू (आफ्नो) भाकल पूर्ण गर्छन्, तथा त्यसदिनप्रति डराउँछन् जसको अमङ्गल सर्वव्यापी रहेको छ ।

९. तथा तिनीहरू दुःखी, टुहुरा र बन्दीहरूलाई उनको प्रेमका कारण भोजन गराउँछन्,

وَيُطْعِمُونَ الطَّعَامَ عَلَىٰ حُبِّهِ مِسْكِينًا وَيَتِيمًا وَأَسِيرًا ﴿٨﴾

१०. "हामी (केवल) अल्लाहको प्रसन्नताको खातिर तिमीहरूलाई भोजन गराउने गर्छौं । हामी तिमीहरूबाट न कुनै प्रतिदान चाहन्छौं न त धन्यवाद नै ।" (भनी तिनीहरू भन्ने गर्छन्) ।

إِنَّمَا نُطْعِمُكُمْ لِوَجْهِ اللَّهِ لَا نُرِيدُ مِنكُمْ جَزَاءً وَلَا شُكُورًا ﴿٩﴾

११. "वस्तुतः, हामी आफ्ना प्रतिपालकका तर्फबाट एउटा उद्वेगपूर्ण र विनाशपूर्ण दिनप्रति डराउँछौं ।"

إِنَّا نَخَافُ مِن رَّبِّنَا يَوْمًا عَبُوسًا قَمْطَرِيرًا ﴿١٠﴾

१२. अतः अल्लाहले तिनीहरूलाई त्यसदिनको विनाशबाट बचाउनेछन्, तथा तिनीहरूलाई हर्ष र आनन्द प्रदान गर्नेछन्।

فَوَقَاهُمُ اللَّهُ شَرَّ ذَٰلِكَ الْيَوْمِ وَلَقَّاهُمْ نَضْرَةً وَسُرُورًا ﴿١١﴾

१३. तथा तिनीहरूको धैर्यधारणको फलस्वरूप उनले तिनीहरूलाई बगैंचा र रेशम (को पोशाक) प्रदान गर्नेछन्,

وَجَزَاهُم بِمَا صَبَرُوا جَنَّةً وَحَرِيرًا ﴿١٢﴾

१४. त्यहाँ पलङ्गमाथि सिरानीमा ढल्किएका हुनेछन्, त्यहाँ तिनीहरूले न अधिक गर्मी पाउनेछन् न अधिक ठन्डी ।

مُّتَّكِئِينَ فِيهَا عَلَى الْأَرَائِكِ ۖ لَا يَرَوْنَ فِيهَا شَمْسًا وَلَا زَمْهَرِيرًا ﴿١٣﴾

१५. तथा त्यसका छायाँहरू उनीहरूमाथि झुक्नेछन् र त्यहाँका फलका झुप्पाहरू तिनीहरूका निकट ल्याइनेछन् ।

وَدَانِيَةً عَلَيْهِمْ ظِلَالُهَا وَذُلِّلَتْ قُطُوفُهَا تَذْلِيلًا ﴿١٤﴾

१६. तथा चाँदीका वर्तनहरू र शीशाका (समेत) सुराहीहरू तिनीहरूका बीचमा बारम्बार ल्याइनेछन् ।

وَيُطَافُ عَلَيْهِم بِآنِيَةٍ مِّن فِضَّةٍ وَأَكْوَابٍ كَانَتْ قَوَارِيرَا ﴿١٥﴾

१७. चाँदीको शीशा, जसलाई तिनीहरूले अत्याधिक कौशलका साथ ढालेका थिए ।

قَوَارِيرَ مِن فِضَّةٍ قَدَّرُوهَا تَقْدِيرًا ﴿١٦﴾

१८. तथा त्यहाँ तिनीहरूलाई अदुवामिश्रित पानीका प्याला पिउन

وَيُسْقَوْنَ فِيهَا كَأْسًا كَانَ مِزَاجُهَا زَنجَبِيلًا ﴿١٧﴾

दिइनेछ,

عَيْنًا فِيْهَا تُسَمّٰى سَلْسَبِيْلًا ۝١٨

१९. त्यहाँको सलसाबिल नामको मूल (बाट) ।

وَيَطُوْفُ عَلَيْهِمْ وِلْدَانٌ مُّخَلَّدُوْنَ ۚ اِذَا رَاَيْتَهُمْ حَسِبْتَهُمْ لُؤْلُؤًا مَّنْثُوْرًا ۝١٩

२०. तथा तिनीहरूका सेवामा नवयुवकहरू उपस्थित रहनेछन् । जब तिमीले तिनीहरूलाई देख्नेछौ, तिनीहरूलाई छरिएका मोतीहरू हुन् भन्ने ठान्नेछौ ।

وَاِذَا رَاَيْتَ ثَمَّ رَاَيْتَ نَعِيْمًا وَّ مُلْكًا كَبِيْرًا ۝٢٠

२१. तथा जब तिमीले हेर्नेछौ, तब त्यहाँ तिमीले एउटा वैभव (अनुग्रह) ठूलो अनुग्रह र एउटा महान राज्य देख्नेछौ ।

عٰلِيَهُمْ ثِيَابُ سُنْدُسٍ خُضْرٌ وَّاِسْتَبْرَقٌ ۫ وَّحُلُّوْٓا اَسَاوِرَ مِنْ فِضَّةٍ ۚ وَسَقٰىهُمْ رَبُّهُمْ شَرَابًا طَهُوْرًا ۝٢١

२२. तिनीहरूमाथि हरिया रेशमका वस्त्रहरू तथा मोटा लुट्टायुक्त रेशमका पहिरन हुनेछन् । तथा तिनीहरूलाई चाँदीका कडाहरूद्वारा सजाइने छ । तथा तिनीहरूका प्रतिपालकले तिनीहरूलाई पिउनका निम्ति पवित्र सर्वत प्रदान गर्नेछन्

اِنَّ هٰذَا كَانَ لَكُمْ جَزَآءً وَّ كَانَ سَعْيُكُمْ مَّشْكُوْرًا ۝٢٢

२३. "यो तिमीहरूको प्रतिदान रहेको छ, तथा तिमीहरूको परिश्रमको कदर गरिएको छ ।"

اِنَّا نَحْنُ نَزَّلْنَا عَلَيْكَ الْقُرْاٰنَ تَنْزِيْلًا ۝٢٣

२४. निश्चय नै, हामीले तिमीमाथि कुरानलाई खण्ड खण्ड गरी अवतीर्ण गरेका छौं ।

فَاصْبِرْ لِحُكْمِ رَبِّكَ وَلَا تُطِعْ مِنْهُمْ اٰثِمًا اَوْ كَفُوْرًا ۝٢٤

२५. अतः धैर्यतापूर्वक आफ्ना प्रतिपालकको निर्णयको प्रतीक्षा गर, तथा तिनीहरूमध्ये (कुनै) पापी र अकृतज्ञ व्यक्तितर्फ नझुक ।

وَاذْكُرِ اسْمَ رَبِّكَ بُكْرَةً وَّ اَصِيْلًا ۝٢٥

२६. तथा बिहानि र बेलुकी आफ्ना प्रतिपालकको नामको स्मरण गर्ने गर ।

وَمِنَ الَّيْلِ فَاسْجُدْ لَهٗ وَسَبِّحْهُ لَيْلًا طَوِيْلًا ۝٢٦

२७. तथा रात्रि समयमा उनका सामुन्ने दण्डवत प्रणाम गर, तथा रातको लामो

(भाग)सम्म उनको महिमा गुणगान गर ।

إِنَّ هَٰٓؤُلَآءِ يُحِبُّونَ الْعَاجِلَةَ وَيَذَرُونَ وَرَآءَهُمْ يَوْمًا ثَقِيلًا ﴿٢٨﴾

२८. वस्तुतः ती (व्यक्तिहरू) वर्तमान जीवनलाई नै मनपराउँछन्, तथा आफ्ना अगाडि (रहेको) कठोर दिनको पर्वाह गर्दैनन् ।

نَحْنُ خَلَقْنَٰهُمْ وَشَدَدْنَآ أَسْرَهُمْ ۚ وَإِذَا شِئْنَا بَدَّلْنَآ أَمْثَٰلَهُمْ تَبْدِيلًا ﴿٢٩﴾

२९. हामीले नै तिनीहरूलाई सृष्टि गरेका हौं तथा तिनीहरूको गठनलाई दृढ तुल्याएका हौं, तथा जब हामीले इच्छा गर्नेछौं, तिनीहरूका स्थानमा तिनीहरूजस्तै अन्य(प्राणी) खडा गर्न सक्नेछौं ।

إِنَّ هَٰذِهِۦ تَذْكِرَةٌ ۚ فَمَن شَآءَ اتَّخَذَ إِلَىٰ رَبِّهِۦ سَبِيلًا ﴿٣٠﴾

३०. वस्तुतः यो एउटा उपदेश हो । अतः जसले चाहन्छ त्यसले आफ्ना प्रतिपालकतर्फ जाने मार्गलाई अवलम्बन गरोस् ।

وَمَا تَشَآءُونَ إِلَّآ أَن يَشَآءَ اللَّهُ ۚ إِنَّ اللَّهَ كَانَ عَلِيمًا حَكِيمًا ﴿٣١﴾

३१. तथा जबसम्म अल्लाहको इच्छा हुँदैन तिमीहरू आफ्नो इच्छाको सदुपयोग गर्न सक्दैनौ । वस्तुतः अल्लाह सर्वज्ञ, तत्वज्ञ छन् ।

يُدْخِلُ مَن يَشَآءُ فِى رَحْمَتِهِۦ ۚ وَالظَّٰلِمِينَ أَعَدَّ لَهُمْ عَذَابًا أَلِيمًا ﴿٣٢﴾

३२. एनले जसलाई चाहन्छन्, त्यसलाई आफ्नो करुणा अन्तर्गत गर्छन्, तथा अत्याचारी व्यक्तिहरूका निम्ति उनले पीडादायक दण्ड तयार (पारेर) राखेका छन्




## अल्-मुर्सलात
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

وَالْمُرْسَلٰتِ عُرْفًا ②

२. तिनीहरूको शपथ जसलाई विस्तारै विस्तारै हिँडाइन्छ ।

فَالْعٰصِفٰتِ عَصْفًا ③

३. त्यसपछि गति बढाएर तिनीहरू द्रुतगतिले अघि बढ्छन् ।

وَّالنّٰشِرٰتِ نَشْرًا ④

४. तथा तिनीहरूको शपथ, जसले अति विस्तृतरूपमा (संन्देश) प्रसारण गर्छन् ।

فَالْفٰرِقٰتِ فَرْقًا ⑤

५. त्यसपछि तिनीहरूले पूर्णरूपले पृथक (फरक) गरेर देखाउँछन् ।

فَالْمُلْقِيٰتِ ذِكْرًا ⑥

६. त्था ती उपदेश बहन गर्नेहरूको शपथ,

عُذْرًا اَوْ نُذْرًا ⑦

७. आफ्नो जिम्मेवारी पूर्ण गर्न अथवा सावधान गर्ने उद्देश्यले ।

اِنَّمَا تُوْعَدُوْنَ لَوَاقِعٌ ⑧

८. वस्तुतः तिमीहरूलाई जुन कुराको वचन दिइन्छ त्यो अवश्य पूर्ण भएरै छाड्नेछ ।

فَاِذَا النُّجُوْمُ طُمِسَتْ ⑨

९. अतः जब ताराहरूले (आफ्नो) प्रकाश गुमाउन पुग्नेछन्,

وَاِذَا السَّمَآءُ فُرِجَتْ ⑩

१०. तथा जब आकाश छिद्र विछिद्र हुनेछ,

وَاِذَا الْجِبَالُ نُسِفَتْ ⑪

११. तथा जब पर्वतहरूलाई उडाइनेछ,

وَاِذَا الرُّسُلُ اُقِّتَتْ ⑫

१२. तथा जब सन्देशवाहकहरूलाई निर्धारित समयमा उपस्थित गरिनेछ –

لِاَيِّ يَوْمٍ اُجِّلَتْ ۝١٢

१३. कुन दिनका निम्ति (त्यस घटनालाई) स्थगित गरेर राखिएको छ?

لِيَوْمِ الْفَصْلِ ۝١٣

१४. निर्णयको दिनका निम्ति ।

وَمَآ اَدْرٰىكَ مَا يَوْمُ الْفَصْلِ ۝١٤

१५. तथा निर्णयको दिन के हो भन्ने कुराप्रति तिमीलाई कसले अवगत गराउँछ र !–

وَيْلٌ يَّوْمَئِذٍ لِّلْمُكَذِّبِيْنَ ۝١٥

१६. त्यसदिन (सत्यका) अस्वीकारीहरू माथि विपत्ति आउनेछ !

اَلَمْ نُهْلِكِ الْاَوَّلِيْنَ ۝١٦

१७. के हामीले पहिलाका मानिसहरूको विनाश गरेनौं र?

ثُمَّ نُتْبِعُهُمُ الْاٰخِرِيْنَ ۝١٧

१८. अब हामी पछिका मानिसहरूलाई तिनीहरूका अनुसरणकारी बनाउँनेछौं ।

كَذٰلِكَ نَفْعَلُ بِالْمُجْرِمِيْنَ ۝١٨

१९. अपराधी व्यक्तिहरूसित हामी यस्तै व्यवहार गर्ने गर्छौं ।

وَيْلٌ يَّوْمَئِذٍ لِّلْمُكَذِّبِيْنَ ۝١٩

२०. त्यसदिन (सत्यका) अस्वीकारीहरू माथि विपत्ति आउनेछ !

اَلَمْ نَخْلُقْكُّمْ مِّنْ مَّآءٍ مَّهِيْنٍ ۝٢٠

२१. के हामीले तिमीहरूलाई एउटा तुच्छ वीर्यको थोपोबाट सृष्टि गरेनौं र,

فَجَعَلْنٰهُ فِيْ قَرَارٍ مَّكِيْنٍ ۝٢١

२२. तथा त्यसलाई हामीले एउटा सुरक्षित स्थानमा राख्यौं,

اِلٰى قَدَرٍ مَّعْلُوْمٍ ۝٢٢

२३. एउटा अनुमानित समयावधिसम्मका निम्ति?

فَقَدَرْنَا ۖ فَنِعْمَ الْقٰدِرُوْنَ ۝٢٣

२४. यस प्रकार हामीले एउटा अनुमान लगायौं, तथा हामी कस्तो उत्तम अनुमान लगाउने गर्छौं !

وَيْلٌ يَّوْمَئِذٍ لِّلْمُكَذِّبِيْنَ ۝٢٤

२५. त्यसदिन (सत्यका) अस्वीकारीहरू माथि विपत्ति आउनेछ !

أَلَمْ نَجْعَلِ الْأَرْضَ كِفَاتًا ﴿٢٦﴾

२६. के हामीले पृथ्वीलाई समेटेर राख्ने बनाएका छैनौं र,

أَحْيَاءً وَّأَمْوَاتًا ﴿٢٧﴾

२७. (सम्पूर्ण) जीवित र मृत (प्राणी)हरूलाई?

وَّجَعَلْنَا فِيهَا رَوَاسِيَ شَامِخَاتٍ وَّأَسْقَيْنَاكُم مَّاءً فُرَاتًا ﴿٢٨﴾

२८. तथा त्यसमाथि हामीले उच्च पर्वतहरू स्थपना गऱ्यौं, तथा तिमीहरूलाई पिउनका निम्ति निर्मल पानी प्रदान गऱ्यौं ।

وَيْلٌ يَّوْمَئِذٍ لِّلْمُكَذِّبِينَ ﴿٢٩﴾

२९. त्यसदिन (सत्यका) अस्वीकारीहरू माथि विपत्ति आउनेछ !

انطَلِقُوا إِلَىٰ مَا كُنتُم بِهِ تُكَذِّبُونَ ﴿٣٠﴾

३०. अब तिमीहरू त्यही कुरोतर्फ जाऊ जसलाई तिमीहरू मिथ्या कुरा ठान्ने गर्थ्यौं,

انطَلِقُوا إِلَىٰ ظِلٍّ ذِي ثَلَاثِ شُعَبٍ ﴿٣١﴾

३१. "(सुन), तिमीहरू यस्तो एउटा छायाँतर्फ जाऊ जसका तीनवटा शाखाहरू छन्,

لَّا ظَلِيلٍ وَّلَا يُغْنِي مِنَ اللَّهَبِ ﴿٣٢﴾

३२. न त्यसले छायाँ प्रदान गर्छ न त ज्वालाबाट नै बचाउँछ,

إِنَّهَا تَرْمِي بِشَرَرٍ كَالْقَصْرِ ﴿٣٣﴾

३३. त्यसले उच्च उच्च दुर्गसदृश सोलाहरू फ्याँक्छ,

كَأَنَّهُ جِمَالَتٌ صُفْرٌ ﴿٣٤﴾

३४. मानौं तिनीहरू पहेँलो -धमिलो) रङ्गका उँटहरू हुन् ।

وَيْلٌ يَّوْمَئِذٍ لِّلْمُكَذِّبِينَ ﴿٣٥﴾

३५. त्यसदिन (सत्यका) अस्वीकारीहरू माथि विपत्ति आउनेछ !

هَٰذَا يَوْمُ لَا يَنطِقُونَ ﴿٣٦﴾

३६. त्यो एउटा यस्तो दिन रहेको छ जसमा तिनीहरूले बोल्न सक्नेछैनन्;

وَلَا يُؤْذَنُ لَهُمْ فَيَعْتَذِرُونَ ﴿٣٧﴾

३७. न त तिनीहरूलाई उजुरी गर्ने अनुमति दिइनेछ ।

وَيْلٌ يَّوْمَئِذٍ لِّلْمُكَذِّبِينَ ﴿٣٨﴾

३८. त्यसदिन (सत्यका) अस्वीकारीहरू माथि विपत्ति आउनेछ !

هٰذَا يَوْمُ الْفَصْلِ ۚ جَمَعْنٰكُمْ وَالْاَوَّلِيْنَ ﴿٣٨﴾

३९. त्यही नै निर्णयको दिन रहेको छ; हामीले तिमीहरूलाई र अतीतका सम्पूर्ण मानिसहरूलाई एकत्रित गरेका छौं ।

فَاِنْ كَانَ لَكُمْ كَيْدٌ فَكِيْدُوْنِ ﴿٣٩﴾

४०. अब यदि तिमीहरूसित कुनै उपाय छ भने त्यसलाई मेराविरुद्ध प्रयोग गर ।"

وَيْلٌ يَّوْمَئِذٍ لِّلْمُكَذِّبِيْنَ ﴿٤٠﴾

४१. त्यसदिन (सत्यका) अस्वीकारीहरू माथि विपत्ति आउनेछ !

اِنَّ الْمُتَّقِيْنَ فِيْ ظِلٰلٍ وَّعُيُوْنٍ ﴿٤١﴾

४२. धर्मनिष्ट व्यक्तिहरू निश्चय नै छायाँ र पानीका मूलहरू(का बीचमा) हुनेछन्,

وَّفَوَاكِهَ مِمَّا يَشْتَهُوْنَ ﴿٤٢﴾

४३. तथा तिनीहरूका मनोवाञ्छित फलहरूमा ।

كُلُوْا وَاشْرَبُوْا هَنِيْٓـًٔا بِمَا كُنْتُمْ تَعْمَلُوْنَ ﴿٤٣﴾

४४. तिमीहरूले गरेका कार्यहरूको प्रतिदानस्वरूप खुशीका साथ खाऊ र पिऊ ।"

اِنَّا كَذٰلِكَ نَجْزِى الْمُحْسِنِيْنَ ﴿٤٤﴾

४५. पुण्यकार्य गर्ने व्यक्तिहरूलाई हामी निश्चयपूर्वक यसै प्रकार प्रतिदान दिने गर्छौं ।

وَيْلٌ يَّوْمَئِذٍ لِّلْمُكَذِّبِيْنَ ﴿٤٥﴾

४६. त्यसदिन (सत्यका) अस्वीकारीहरू माथि विपत्ति आउनेछ !

كُلُوْا وَتَمَتَّعُوْا قَلِيْلًا اِنَّكُمْ مُّجْرِمُوْنَ ﴿٤٦﴾

४७. (ए सत्यका अस्वीकारीहरूहो, यस संसारमा) तिमीहरू केही समयसम्म खाऊ र आनन्द उपभोग गर; तिमीहरू निश्चयपूर्वक अपराधी व्यक्तिहरू हौ ।"

وَيْلٌ يَّوْمَئِذٍ لِّلْمُكَذِّبِيْنَ ﴿٤٧﴾

४८. त्यसदिन (सत्यका) अस्वीकारीहरू माथि विपत्ति आउनेछ !

وَاِذَا قِيْلَ لَهُمُ ارْكَعُوْا لَا يَرْكَعُوْنَ ﴿٤٨﴾

४९. तथा जब तिनीहरूलाई भनिन्छ, "नतमस्तक गर," तिनीहरू नतमस्तक गर्दैनन् ।

وَيْلٌ يَّوْمَئِذٍ لِّلْمُكَذِّبِيْنَ ﴿٤٩﴾

५०. त्यसदिन (सत्यका) अस्वीकारीहरू माथि विपत्ति आउनेछ !

فَبِاَيِّ حَدِيْثٍۢ بَعْدَهٗ يُؤْمِنُوْنَ ﴿٥٠﴾

५१. अतः यसलाई छाडी तिनीहरूले कुन वाणीप्रति विश्वास गर्नेछन् त?

سُوْرَةُ النَّبَاِ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ اِحْدٰى وَاَرْبَعُوْنَ اٰيَةً وَّرُكُوْعَانِ

## अल्-नबा
(हिजरतअघि अवतरित)

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

२. तिनीहरू कुन कुराका सम्बन्धमा परस्पर एक-अर्कासित प्रश्न गरिरहेछन्?

عَمَّ يَتَسَآءَلُوْنَ ②

३. त्यस महत्वपूर्ण खबरका सम्बन्धमा,

عَنِ النَّبَاِ الْعَظِيْمِ ③

४. जसका सम्बन्धमा तिनीहरू (परस्पर) मतभेद राख्छन् ।

الَّذِيْ هُمْ فِيْهِ مُخْتَلِفُوْنَ ④

५. होइन, (अपितु) शीघ्र नै तिनीहरूले जान्नेछन् ।

كَلَّا سَيَعْلَمُوْنَ ⑤

६. होइन, (अपितु) पुनः, (हामी भन्छौं) तिनीहरूले शीघ्र नै जान्नेछन् ।

ثُمَّ كَلَّا سَيَعْلَمُوْنَ ⑥

७. के हामीले पृथ्वीलाई एउटा बिछ्यौनास्वरूप बनाएका छैनौं र ,

اَلَمْ نَجْعَلِ الْاَرْضَ مِهٰدًا ⑦

८. तथा पर्वतहरूलाई काँटीसदृश?

وَّالْجِبَالَ اَوْتَادًا ⑧

९. तथा हामीले तिमीहरूलाई जोडी जोडी सृष्टि गरेका छौं,

وَّخَلَقْنٰكُمْ اَزْوَاجًا ⑨

१०. तथा हामीले तिमीहरूको निद्रालाई विश्रामप्रद बनाएका छौं

وَّجَعَلْنَا نَوْمَكُمْ سُبَاتًا ⑩

११. तथा रात्रिलाई हामीले आवरणस्वरूप बनाएका छौं,

وَّجَعَلْنَا الَّيْلَ لِبَاسًا ⑪

१२. तथा दिनलाई हामीले जीवीकाको खोजीका निम्ति बनाएका छौं ।

وَّجَعَلْنَا النَّهَارَ مَعَاشًا ⑫

وَّبَنَيْنَا فَوْقَكُمْ سَبْعًا شِدَادًا ﴿١٣﴾

१३. तथा तिमीहरूमाथि हामीले सातवटा दृढ (आकाशमण्डल) बनाएका छौं;

وَّجَعَلْنَا سِرَاجًا وَّهَّاجًا ﴿١٤﴾

१४. तथा हामीले (सूर्यलाई) एउटा उज्ज्वल दीपक बनाएका छौं ।

وَّاَنْزَلْنَا مِنَ الْمُعْصِرٰتِ مَآءً ثَجَّاجًا ﴿١٥﴾

१५. तथा हामीले घना बादलबाट प्रशस्त बग्ने पानी अवतीर्ण गरेका छौं,

لِّنُخْرِجَ بِهٖ حَبًّا وَّنَبَاتًا ﴿١٦﴾

१६. ताकि त्यसद्वारा हामी अन्नका दानाहरू र वनस्पति उब्जाउन सकौं,

وَّجَنّٰتٍ اَلْفَافًا ﴿١٧﴾

१७. तथा प्रशस्त उपज हुने बगैंचाहरू ।

اِنَّ يَوْمَ الْفَصْلِ كَانَ مِيْقَاتًا ﴿١٨﴾

१८. निश्चय नै, निर्णयका दिनका निम्ति एउटा निर्धारित समय रहेको छ :

يَّوْمَ يُنْفَخُ فِى الصُّوْرِ فَتَاْتُوْنَ اَفْوَاجًا ﴿١٩﴾

१९. जुनदिन बिगुल बजाइनेछ; तथा तिमीहरू ठूला ठूला समूहका रूपमा उपस्थित हुनेछौं;

وَّفُتِحَتِ السَّمَآءُ فَكَانَتْ اَبْوَابًا ﴿٢٠﴾

२०. तथा आकाशलाई खोलिनेछ, र त्यो (पूर्णरूपमा) ढोकै ढोका हुन पुग्नेछ;

وَّسُيِّرَتِ الْجِبَالُ فَكَانَتْ سَرَابًا ﴿٢١﴾

२१. तथा पर्वतहरूलाई गतिशील तुल्याइनेछ तथा तिनीहरू मरीचिका (सदृश) हुन पुग्नेछन् ।

اِنَّ جَهَنَّمَ كَانَتْ مِرْصَادًا ﴿٢٢﴾

२२. निश्चय नै नर्कले ढुकिरहेछ,

لِّلطّٰغِيْنَ مَاٰبًا ﴿٢٣﴾

२३. त्यो विद्रोहीहरूको घर रहेको छ,

لّٰبِثِيْنَ فِيْهَآ اَحْقَابًا ﴿٢٤﴾

२४. तिनीहरू त्यहाँ दीर्घकालसम्म रहनेछन् ।

لَا يَذُوْقُوْنَ فِيْهَا بَرْدًا وَّلَا شَرَابًا ﴿٢٥﴾

२५. त्यहाँ तिनीहरूलाई न त शीतलता प्राप्त हुनेछ न कुनै प्रकारको पिउने पदार्थ नै,

إِلَّا حَمِيْمًا وَّغَسَّاقًا

२६. सिवाय उम्लँदो तातो पानी अथवा अत्यन्त चिसो (पानी)।

جَزَآءً وِّفَاقًا

२७. एउटा उपयुक्त बदला (प्रतिदान)स्वरूप ।

إِنَّهُمْ كَانُوْا لَا يَرْجُوْنَ حِسَابًا

२८. वस्तुतः, तिनीहरू हिसाब-किताबको डर (मनमा) राख्दैनथे,

وَّكَذَّبُوْا بِاٰيٰتِنَا كِذَّابًا

२९. तथा हाम्रा चिह्नहरूलाई पूर्णरूपमा अस्वीकार गर्थे ।

وَكُلَّ شَيْءٍ اَحْصَيْنٰهُ كِتٰبًا

३०. तथा हरेक कुरालाई हामीले एउटा पुस्तकमा लिपिबद्ध राखेका छौं ।

فَذُوْقُوْا فَلَنْ نَّزِيْدَكُمْ اِلَّا عَذَابًا

३१. "अतः तिमीहरू (दण्ड) चाखः हामी तिमीहरूको दण्डलाई वृद्धि गर्दै नै जानेछौं ।"

اِنَّ لِلْمُتَّقِيْنَ مَفَازًا

३२. वस्तुतः, धर्मनिष्ठ (अल्लाहसित डराउने) व्यक्तिहरूका निम्ति एउटा (ठूलो) कृतकार्यता रहेको छ :

حَدَآئِقَ وَاَعْنَابًا

३३. पर्खालले घेरिएका बगैंचाहरू र अङ्गुर,

وَّكَوَاعِبَ اَتْرَابًا

३४. तथा समवयस्क तरुनी महिलाहरू,

وَّكَاْسًا دِهَاقًا

३५. तथा भरिभराउ प्यालाहरू ।

لَا يَسْمَعُوْنَ فِيْهَا لَغْوًا وَّلَا كِذّٰبًا

३६. त्यहाँ तिनीहरूले न कुनै व्यर्थ कुरा सुन्नेछन् न त मिथ्या कुरा नै ।

جَزَآءً مِّنْ رَّبِّكَ عَطَآءً حِسَابًا

३७. तिम्रा प्रतिपालककातर्फबाट एउटा प्रतिफलस्वरूप (तिनीहरूका कार्यहरूको) यथायोग्य पुरस्कार–

رَّبِّ السَّمٰوٰتِ وَالْاَرْضِ وَمَا بَيْنَهُمَا الرَّحْمٰنِ لَا يَمْلِكُوْنَ مِنْهُ خِطَابًا

३८. आकाशमण्डल र पृथ्वी तथा ती दुबै बीचमा रहेका सम्पूर्ण वस्तुहरूका स्वामी, परम कृपालु(का तर्फबाट), तिनीहरूलाई

उनीसित वार्ता गर्ने अधिकार मिल्नेछैन ।

يَوْمَ يَقُومُ الرُّوحُ وَالْمَلَٰٓئِكَةُ صَفًّا ۖ لَّا يَتَكَلَّمُونَ إِلَّا مَنْ أَذِنَ لَهُ الرَّحْمَٰنُ وَقَالَ صَوَابًا ﴿٣٨﴾

३९. त्यसदिन (पवित्र) आत्मा र फरिस्ताहरू पङ्क्तिबद्ध खडा रहनेछन्, तिनीहरू केही बोल्नेछैनन्, परन्तु त्यही (बोल्नेछ) जसलाई परम कृपालु(अल्लाह)ले अनुमति दिनेछन्, तथा त्यसले केवल उचित कुरामात्र गर्नेछ ।

ذَٰلِكَ الْيَوْمُ الْحَقُّ ۖ فَمَن شَآءَ اتَّخَذَ إِلَىٰ رَبِّهِ مَـَٔابًا ﴿٣٩﴾

४०. त्यो दिन आएरै छाड्नेछ । अतः जसले चाहन्छ, त्यसले आफ्ना प्रतिपालकका चरणमा आश्रय याचना गरोस् ।

إِنَّآ أَنذَرْنَٰكُمْ عَذَابًا قَرِيبًا يَوْمَ يَنظُرُ الْمَرْءُ مَا قَدَّمَتْ يَدَاهُ وَيَقُولُ الْكَافِرُ يَٰلَيْتَنِى كُنتُ تُرَٰبًۢا ﴿٤٠﴾

४१. वस्तुतः हामीले तिमीहरूलाई एउटा अति निकटमा रहेको दण्डबाट सावधान गरिदिएका छौं: त्यसदिन मानिसले त्यस (वस्तु)लाई देख्नेछ जुन (वस्तु) उसका हातले अघि पठाएको छ, तथा अविश्वासीले (के) भन्नेछ (भने), "हाय ! यदि म केवल माटो नै रहेको भए !"




## अल्-नाजिआत
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ﴿١﴾

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

وَالنّٰزِعٰتِ غَرْقًا ﴿٢﴾

२. तिनीहरूको शपथ, जो गहिराईमा जान्छन् तथा डुब्ने उद्देश्यले तान्ने गर्छन् ।

وَّالنّٰشِطٰتِ نَشْطًا ﴿٣﴾

३. तथा तिनीहरूको शपथ, जो देशमा तीव्रगतिले परिभ्रमण गर्छन् ।

وَّالسّٰبِحٰتِ سَبْحًا ﴿٤﴾

४. तथा तिनीहरूको शपथ, जो समुद्रको सतहमा (हुँदै) द्रुतगतिले टाढा-टाढासम्म परिभ्रमण गर्छन्,

فَالسّٰبِقٰتِ سَبْقًا ﴿٥﴾

५. तथा तिनीहरूको शपथ जो अग्रासन प्राप्तिका निम्ति परस्पर प्रतिस्पर्धा गर्छन् ।

فَالْمُدَبِّرٰتِ اَمْرًا ﴿٦﴾

६. तथा तिनीहरूको शपथ जसले योजना बनाउँछन् र आफ्नो काम उत्तमरूपले सम्पादन गर्छन् ।

يَوْمَ تَرْجُفُ الرَّاجِفَةُ ﴿٧﴾

७. (त्यो) त्यसदिन हुनेछ जब कम्पित (पृथ्वी) काँप्नेछ,

تَتْبَعُهَا الرَّادِفَةُ ﴿٨﴾

८. त्यसको लगत्तै पछि दोस्रोपटक (कम्पन) हुनेछ ।

قُلُوْبٌ يَّوْمَئِذٍ وَّاجِفَةٌ ﴿٩﴾

९. त्यसदिन हृदय थरथराउनेछ,

اَبْصَارُهَا خَاشِعَةٌ ﴿١٠﴾

१०. (तथा) तिनीहरूका दृष्टिहरू झुक्नेछन्–

يَقُوْلُوْنَ ءَاِنَّا لَمَرْدُوْدُوْنَ فِى الْحَافِرَةِ ﴿١١﴾

११. तिनीहरू भन्छन्, "के हामीलाई (साँच्चै नै) आफ्नो पहिलाकै अवस्थामा लगिनेछ त?

| | |
|---|---|
| ءَاِذَا كُنَّا عِظَامًا نَّخِرَةً ⑪ | १२. के ! हामी सडेका हड्डीहरूमा परिणत भइसकेपछि पनि?" |
| قَالُوْا تِلْكَ اِذًا كَرَّةٌ خَاسِرَةٌ ⑫ | १३. तिनीहरू भन्छन्, 'त्यसो भए ता त्यो एउटा घाटापूर्ण प्रत्यावर्तन हुनेछ ।" |
| فَاِنَّمَا هِيَ زَجْرَةٌ وَّاحِدَةٌ ⑬ | १४. त्यो ता केवल एउटा चिच्च्याहट (हप्की) हुनेछ, |
| فَاِذَا هُمْ بِالسَّاهِرَةِ ⑭ | १५. तथा सुन ! तिनीहरू (सबै निस्केर) खुल्ला मैदानमा उपस्थित हुनेछन् । |
| هَلْ اَتٰىكَ حَدِيْثُ مُوْسٰى ⑮ | १६. के तिमीलाई मूसाको घटना प्राप्त भएको छ? |
| اِذْ نَادٰىهُ رَبُّهٗ بِالْوَادِ الْمُقَدَّسِ طُوًى ⑯ | १७. जब उनका प्रतिपालकले उनलाई तुवाको पवित्र उपत्यकामा (के भन्दै) बोलाएका थिए (भने), |
| اِذْهَبْ اِلٰى فِرْعَوْنَ اِنَّهٗ طَغٰى ⑰ | १८. "तिमी फिरौनतर्फ जाउ, किनभने त्यो विद्रोही बनेको छ । |
| فَقُلْ هَلْ لَّكَ اِلٰٓى اَنْ تَزَكّٰى ⑱ | १९. तथा (त्यसलाई) भन, के तँलाई पवित्र हुने इच्छा रहेको छ? |
| وَاَهْدِيَكَ اِلٰى رَبِّكَ فَتَخْشٰى ⑲ | २०. तथा म तँलाई तेरा प्रतिपालकतर्फ मार्ग देखाउनेछु ताकि तँ उनीसित डराउने गर ।" |
| فَاَرٰىهُ الْاٰيَةَ الْكُبْرٰى ⑳ | २१. अतः उनले त्यसलाई एउटा ठूलो चिह्न देखाए । |
| فَكَذَّبَ وَعَصٰى ㉑ | २२. परन्तु उसले (उनलाई) अस्वीकार गऱ्यो र अवज्ञा गऱ्यो । |
| ثُمَّ اَدْبَرَ يَسْعٰى ㉒ | २३. त्यसपछि उसले (उनीविरुद्ध) षडयन्त्र गर्दै (मूसाबाट) मुख फेऱ्यो । |
| فَحَشَرَ فَنَادٰى ㉓ | २४. तथा उसले (आफ्ना मानिसहरूलाई) |

एकत्रित गऱ्यो र घोषणा गऱ्यो,

فَقَالَ اَنَا رَبُّكُمُ الْاَعْلٰى ۝٢٥

२५. के भन्दै भने, "म नै तिमीहरूको सर्वश्रेष्ठ प्रतिपालक हुँ ।"

فَاَخَذَهُ اللّٰهُ نَكَالَ الْاٰخِرَةِ وَالْاُوْلٰى ۝٢٦

२६. अतः अल्लाहले त्यसलाई परलोकमा र यस संसारमा दण्ड दिनका निम्ति समाते

اِنَّ فِيْ ذٰلِكَ لَعِبْرَةً لِّمَنْ يَّخْشٰى ۝٢٦

२७. त्यस (कुरा)मा डराउने व्यक्तिका निम्ति निश्चयपूर्वक एउटा ठूलो पाठ छ ।

ءَاَنْتُمْ اَشَدُّ خَلْقًا اَمِ السَّمَآءُ ۚ بَنٰىهَا ۝٢٧

२८. के तिमीहरूलाई सृष्टि गर्नु अधिक कठिन छ अथवा त्यो आकाशलाई, जसलाई उनले सिर्जना गरेका छन्?

رَفَعَ سَمْكَهَا فَسَوّٰىهَا ۝٢٨

२९. उनले त्यसको उच्चतालाई अति उच्च बनाएका छन् र त्यसलाई बेदाग तुल्याएका छन् ।

وَاَغْطَشَ لَيْلَهَا وَاَخْرَجَ ضُحٰىهَا ۝٢٩

३०. तथा उनले त्यसको रात्रिलाई अन्धकारमय बनाएका छन् र त्यसबाट प्रातकाललाई बाहिर निकालेका छन्;

وَالْاَرْضَ بَعْدَ ذٰلِكَ دَحٰىهَا ۝٣٠

३१. तथा त्यसका साथै उनले पृथ्वीलाई बिछ्याए ।

اَخْرَجَ مِنْهَا مَآءَهَا وَمَرْعٰىهَا ۝٣١

३२. त्यसबाट उनले त्यसको पानी तथा (हरियो) घाँस उब्जाए,

وَالْجِبَالَ اَرْسٰىهَا ۝٣٢

३३. तथा पर्वतहरू, जसलाई उनले दृढस्थिर बनाएका छन् ।

مَتَاعًا لَّكُمْ وَلِاَنْعَامِكُمْ ۝٣٣

३४. (ती सबै कुरा) तिमीहरू र तिमीहरूका चौपायाहरूको जीविकास्वरूप रहेका छन् ।

فَاِذَا جَآءَتِ الطَّآمَّةُ الْكُبْرٰى ۝٣٤

३५. परन्तु जब त्यो भयानक विपत्ति आउनेछ,

يَوْمَ يَتَذَكَّرُ الْاِنْسَانُ مَا سَعٰى ۝٣٥

३६. त्यसदिन जब मानिसले आफूले गरेका प्रयत्नहरूलाई स्मरण गर्नेछ,

| | |
|---|---|
| ३७. तथा देख्ने व्यक्तिका निम्ति नर्कलाई स्पष्टरूपमा प्रकट गरिनेछ । | وَبُرِّزَتِ الْجَحِيْمُ لِمَنْ يَّرٰى ۝٣٦ |
| ३८. अतः त्यस विद्रोही व्यक्तिका सम्बन्धमा भने, | فَاَمَّا مَنْ طَغٰى ۝٣٧ |
| ३९. तथा जसले यस वर्तमान जीवनलाई प्राथमिकता दिन्छ, | وَاٰثَرَ الْحَيٰوةَ الدُّنْيَا ۝٣٨ |
| ४०. नर्कको अग्नि नै (त्यसको) घर हुनेछ | فَاِنَّ الْجَحِيْمَ هِيَ الْمَاْوٰى ۝٣٩ |
| ४१. परन्तु त्यो व्यक्ति जो आफ्ना प्रतिपालकका सामुन्ने खडा हुनबाट डराउँछ, तथा आफ्नो आत्मालाई कु-अभिलाषाहरूबाट रोकेर राख्छ, | وَاَمَّا مَنْ خَافَ مَقَامَ رَبِّهٖ وَنَهَى النَّفْسَ عَنِ الْهَوٰى ۝٤٠ |
| ४२. (त्यसको) घर भने निश्चयपूर्वक जन्नत (स्वर्ग) नै हुनेछ । | فَاِنَّ الْجَنَّةَ هِيَ الْمَاْوٰى ۝٤١ |
| ४३. तिनीहरू तिमीसित निर्धारित घडीको सम्बन्धमा "त्यो कहिले आउनेछ"? भनी सोध्छन्: | يَسْـَٔلُوْنَكَ عَنِ السَّاعَةِ اَيَّانَ مُرْسٰىهَا ۝٤٢ |
| ४४. परन्तु त्यसको चर्चासित तिम्रो के सम्बन्ध रहेको छ र? | فِيْمَ اَنْتَ مِنْ ذِكْرٰىهَا ۝٤٣ |
| ४५. त्यसको अन्तिम ज्ञान भने अल्लाहकै जुनाफमा (रहेको) छ । | اِلٰى رَبِّكَ مُنْتَهٰىهَا ۝٤٤ |
| ४६. तिमी ता केवल त्यस व्यक्तिका निम्ति एकजना सावधानकर्ता हौ जो व्यक्ति त्यसप्रति डराउँछ । | اِنَّمَآ اَنْتَ مُنْذِرُ مَنْ يَّخْشٰىهَا ۝٤٥ |
| ४७. त्यसदिन जब तिनीहरूले त्यसलाई देख्नेछन् (तिनीहरूले के सोच्नेछन् भने), तिनीहरू (पृथ्वीमा) केवल एक बेलुकी अथवा एक बिहानी मात्र रहेका थिए । | كَاَنَّهُمْ يَوْمَ يَرَوْنَهَا لَمْ يَلْبَثُوْٓا اِلَّا عَشِيَّةً اَوْ ضُحٰىهَا ۝٤٦ |




## 'अबस
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

عَبَسَ وَتَوَلّٰىٓ ②

२. त्यसले आँखीभुइँ खुम्च्यायो र एकतर्फ मुख फेऱ्यो,

اَنْ جَآءَهُ الْاَعْمٰى ③

३. कारण त्यससमक्ष एउटा अन्धो व्यक्ति आएको थियो ।

وَمَا يُدْرِيْكَ لَعَلَّهٗ يَزَّكّٰىٓ ④

४. त्यो व्यक्ति, स्वयम्लाई पवित्र तुल्याउन चाहन्छ भनेर तिमीलाई कसले अवगत गराउँछ,

اَوْ يَذَّكَّرُ فَتَنْفَعَهُ الذِّكْرٰى ⑤

५. अथवा त्यसले अर्ती लिनेछ तथा त्यस अर्तीले त्यसलाई लाभान्वित तुल्याउनेछ (भनी)?

اَمَّا مَنِ اسْتَغْنٰى ⑥

६. त्यो (व्यक्ति) जसले अहङ्कारपूर्ण तरिकाले उदासीनता प्रदर्शन गर्छ ।

فَاَنْتَ لَهٗ تَصَدّٰى ⑦

७. त्यसतर्फ भने तिमी ध्यान दिने गर्छौ,

وَمَا عَلَيْكَ اَلَّا يَزَّكّٰى ⑧

८. इदि त्यो व्यक्ति पवित्र हुन नचाहेमा त्यसको जिम्मेवार भने तिमी छैनौ ।

وَاَمَّا مَنْ جَآءَكَ يَسْعٰى ⑨

९. परन्तु जुन व्यक्ति दगुर्दै तिमीतर्फ आउँछ,

وَهُوَ يَخْشٰى ⑩

१०. तथा त्यो व्यक्ति (अल्लाहसित) डराउँछ,

فَاَنْتَ عَنْهُ تَلَهّٰى ⑪

११. त्यसलाई भने तिमी उपेक्षा गर्छौ ।

كَلَّآ اِنَّهَا تَذْكِرَةٌ ⑫

१२. होइन ! (अपितु) यो ता निस्सन्देह

एउटा उपदेश हो–

१३. अत: जसले इच्छा गर्छ त्यसले यसप्रति ध्यान देओस् –

فَمَنْ شَآءَ ذَكَرَهٗ ﴿١٢﴾

१४. सम्माननीय ताउहरूमा (रहेको छ),

فِيْ صُحُفٍ مُّكَرَّمَةٍ ﴿١٣﴾

१५. (त्यो) उच्चता, पवित्रता प्राप्त (रहेको छ),

مَّرْفُوْعَةٍ مُّطَهَّرَةٍ ﴿١٤﴾

१६. (यस्ता) लेखकहरूका हातमा,

بِاَيْدِيْ سَفَرَةٍ ﴿١٥﴾

१७. जो महान (तथा) पवित्र हृदयी छन् ।

كِرَامٍ بَرَرَةٍ ﴿١٦﴾

१८. मानिसको सत्यनाश होस् ! त्यो कस्तो कृतघ्न रहेको छ!

قُتِلَ الْاِنْسَانُ مَآ اَكْفَرَهٗ ﴿١٧﴾

१९. कुन वस्तुबाट उनले उसलाई सृष्टि गरेका हुन्?

مِنْ اَيِّ شَيْءٍ خَلَقَهٗ ﴿١٨﴾

२०. एउटा वीर्यको थोपोबाट ! उनले उसलाई सृष्टि गरे, र उसको अनुमान लगाए;

مِنْ نُّطْفَةٍ ؕ خَلَقَهٗ فَقَدَّرَهٗ ﴿١٩﴾

२१. त्यसपछि उनले त्यसका निम्ति मार्गलाई सरल बनाए,

ثُمَّ السَّبِيْلَ يَسَّرَهٗ ﴿٢٠﴾

२२. त्यसपछि त्यसलाई मृत्यु प्रदान गरे र त्यसको चिहान निर्धारण गरे;

ثُمَّ اَمَاتَهٗ فَاَقْبَرَهٗ ﴿٢١﴾

२३. त्यसपछि, जब उनले चाहनेछन् त्यसलाई पुनर्जीवित गर्नेछन् ।

ثُمَّ اِذَا شَآءَ اَنْشَرَهٗ ﴿٢٢﴾

२४. होइन ! (अपितु) जुन(कार्य गर्ने) उसलाई आदेश दिइएको थियो त्यसले अहिलेसम्म त्यो (कार्य) गरेकै छैन,

كَلَّا لَمَّا يَقْضِ مَآ اَمَرَهٗ ﴿٢٣﴾

२५. अत: मानिसले आफ्नो खाद्यतर्फ हेरोस् :

فَلْيَنْظُرِ الْاِنْسَانُ اِلٰى طَعَامِهٖٓ ﴿٢٤﴾

| | |
|---|---|
| اَنَّا صَبَبْنَا الْمَآءَ صَبًّا ﴿٢٦﴾ | २६. कसरी हामी प्रशस्त मात्रामा पानी अवतीर्ण गर्छौं, |
| ثُمَّ شَقَقْنَا الْاَرْضَ شَقًّا ﴿٢٧﴾ | २७. त्यसपछि हामी पृथ्वीलाई राम्ररी चिर्छौं– |
| فَاَنْۢبَتْنَا فِيْهَا حَبًّا ﴿٢٨﴾ | २८. त्यसपछि त्यसमा (हामी) अन्न उमार्छौं, |
| وَّعِنَبًا وَّقَضْبًا ﴿٢٩﴾ | २९. तथा अंगुर र वनस्पति, |
| وَّزَيْتُوْنًا وَّنَخْلًا ﴿٣٠﴾ | ३०. तथा जैतुन र खजूर । |
| وَّحَدَآئِقَ غُلْبًا ﴿٣١﴾ | ३१. तथा घना वृक्षहरूयुक्त पर्खालले घेरिएका बगैंचाहरू, |
| وَّفَاكِهَةً وَّاَبًّا ﴿٣٢﴾ | ३२. तथा फलहरू र जडीबुटीहरू, |
| مَّتَاعًا لَّكُمْ وَلِاَنْعَامِكُمْ ﴿٣٣﴾ | ३३. तिमीहरू र तिमीहरूका चौपाया हरूको जीविकास्वरूप । |
| فَاِذَا جَآءَتِ الصَّآخَّةُ ﴿٣٤﴾ | ३४. परन्तु जब बहिरो तुल्याउने चिच्याहट(को घडी) आउनेछ, |
| يَوْمَ يَفِرُّ الْمَرْءُ مِنْ اَخِيْهِ ﴿٣٥﴾ | ३५. त्यस दिन मानिस आफ्नै भाइबाट टाढा भाग्नेछ, |
| وَاُمِّهٖ وَاَبِيْهِ ﴿٣٦﴾ | ३६. त्था आफ्नी माता र आफ्ना पिता (बाट), |
| وَصَاحِبَتِهٖ وَبَنِيْهِ ﴿٣٧﴾ | ३७. त्था आफ्नी पत्नी र आफ्ना पुत्रहरू (बाट), |
| لِكُلِّ امْرِئٍ مِّنْهُمْ يَوْمَئِذٍ شَاْنٌ يُّغْنِيْهِ ﴿٣٨﴾ | ३८. त्यस दिन तिनीहरूमध्ये प्रत्येक व्यक्तिलाई त्यसको आफ्नै मामिलाले (अन्य व्यक्तिहरूबाट) अलग्गै (अल्झाएर) राख्नेछ |
| وُجُوْهٌ يَّوْمَئِذٍ مُّسْفِرَةٌ ﴿٣٩﴾ | ३९. त्यसदिन केही मुहारहरू उज्वल हुनेछन् । |

ضَاحِكَةٌ مُّسْتَبْشِرَةٌ ۝

४०. हाँस्दै गरेका, प्रसन्न मुद्रामा (हुनेछन्)

وَوُجُوهٌ يَوْمَئِذٍ عَلَيْهَا غَبَرَةٌ ۝

४१. तथा केही मुहारहरू भने, त्यसदिन धूलोमूलोयुक्त हुनेछन्,

تَرْهَقُهَا قَتَرَةٌ ۝

४२. तिनीहरूमाथि अन्धकार छाएको हुनेछ ।

أُولَٰئِكَ هُمُ الْكَفَرَةُ الْفَجَرَةُ ۝

४३. तिनीहरू नै अविश्वासी (र) दुष्कर्मी (प्रमाणित) हुनेछन् ।




## अल-तकवीर

(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ﴿١﴾

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

اِذَا الشَّمْسُ كُوِّرَتْ ﴿٢﴾

२. जब सूर्यलाई बेरिनेछ,

وَاِذَا النُّجُوْمُ انْكَدَرَتْ ﴿٣﴾

३. तथा जब ताराहरू धमिला हुनेछन्,

وَاِذَا الْجِبَالُ سُيِّرَتْ ﴿٤﴾

४. तथा जब पर्वतहरूलाई गतिशील तुल्याइनेछ,

وَاِذَا الْعِشَارُ عُطِّلَتْ ﴿٥﴾

५. तथा जब दश महिनाका गर्भिणी उँटनीहरू त्यागिनेछन्,

وَاِذَا الْوُحُوْشُ حُشِرَتْ ﴿٦﴾

६. तथा जब पशुहरूलाई एकत्रित गरिनेछ,

وَاِذَا الْبِحَارُ سُجِّرَتْ ﴿٧﴾

७. तथा जब समुद्रहरूलाई (परस्पर एक-अर्कामा) मिलाएर बगाइनेछ,

وَاِذَا النُّفُوْسُ زُوِّجَتْ ﴿٨﴾

८. तथा जब मानिसहरूलाई जम्मा गरिनेछ

وَاِذَا الْمَوْءٗدَةُ سُئِلَتْ ﴿٩﴾

९. तथा जब जीवित गाडिने गरेका (बालिका)का बारेमा सोधपुछ गरिनेछ,

بِاَيِّ ذَنْۢبٍ قُتِلَتْ ﴿١٠﴾

१०. "कुन अपराधका कारण त्यसलाई वध गरिएको थियो?"

وَاِذَا الصُّحُفُ نُشِرَتْ ﴿١١﴾

११. तथा जब पुस्तकहरू फैलाइनेछन्,

وَاِذَا السَّمَآءُ كُشِطَتْ ﴿١٢﴾

१२. तथा जब आकाशलाई अनावरण गरिनेछ ।

وَاِذَا الْجَحِيْمُ سُعِّرَتْ ﴿١٣﴾

१३. तथा जब अग्नि दन्काइनेछ,

وَاِذَا الْجَنَّةُ اُزْلِفَتْ ﴿١٤﴾

१४. तथा जब बगैंचा (स्वर्ग)लाई (अति) निकट ल्याइनेछ,

عَلِمَتْ نَفْسٌ مَّآ اَحْضَرَتْ ﴿١٥﴾

१५. तब प्रत्येक आत्माले त्यस कुरालाई जान्नेछ जुन उसले पहिला प्रस्तुत गरिसकेको छ ।

فَلَآ أُقْسِمُ بِالْخُنَّسِ ﴿١٦﴾

१६. होइन! (अपितु) म पछि हटने ग्रहहरूलाई साक्षी राख्छु,

الْجَوَارِ الْكُنَّسِ ﴿١٧﴾

१७. (साथै)अघि बढ्ने (र त्यसपछि) लुक्ने (लाई) ।

وَالَّيْلِ إِذَا عَسْعَسَ ﴿١٨﴾

१८. तथा अन्त हुन लागेको रात्रिलाई (साक्षीस्वरूप प्रस्तुत गर्छु),

وَالصُّبْحِ إِذَا تَنَفَّسَ ﴿١٩﴾

१९. तथा स्वास लिन लागेको बिहानिलाई,

إِنَّهُ لَقَوْلُ رَسُوْلٍ كَرِيْمٍ ﴿٢٠﴾

२०. अर्थात्, यो निस्सन्देह एकजना महान सन्देशवाहकको (अवतरित) वाणी हो,

ذِيْ قُوَّةٍ عِنْدَ ذِي الْعَرْشِ مَكِيْنٍ ﴿٢١﴾

२१. शक्ति सम्पन्न, महासिंहासनका स्वामीका जुनाफमा उनी उच्च दर्जा प्राप्त (रहेका छन्),

مُّطَاعٍ ثَمَّ أَمِيْنٍ ﴿٢٢﴾

२२. आज्ञा पालन गरिएका, र (अत्यन्त) विश्वसनीय पनि छन् ।

وَمَا صَاحِبُكُمْ بِمَجْنُوْنٍ ﴿٢٣﴾

२३. तथा तिमीहरूका मित्र पागल - व्यक्ति) होइनन् ।

وَلَقَدْ رَاٰهُ بِالْأُفُقِ الْمُبِيْنِ ﴿٢٤﴾

२४. तथा उनले अवश्य नै उनलाई (अदृश्य शक्तिलाई) खुल्ला क्षितिजमा देखेका छन् ।

وَمَا هُوَ عَلَى الْغَيْبِ بِضَنِيْنٍ ﴿٢٥﴾

२५. तथा अदृश्यका सम्बन्धमा उनी कृपण छैनन् ।

وَمَا هُوَ بِقَوْلِ شَيْطٰنٍ رَّجِيْمٍ ﴿٢٦﴾

२६. न त त्यो तिरस्कृत सैतानको वाणी हो

فَأَيْنَ تَذْهَبُوْنَ ﴿٢٧﴾

२७. अतःतिमीहरू कुन दिशामा गइरहेछौ?

إِنْ هُوَ إِلَّا ذِكْرٌ لِّلْعٰلَمِيْنَ ﴿٢٨﴾

२८. यो ता केवल सम्पूर्ण विश्वब्रह्माण्डका निम्ति एउटा उपदेश हो

لِمَنْ شَآءَ مِنْكُمْ أَنْ يَّسْتَقِيْمَ ﴿٢٩﴾

२९. तिमीहरूमध्ये त्यस व्यक्तिका निम्ति, जो सन्मार्गमा हिँड्न चाहन्छ,

وَمَا تَشَآءُوْنَ إِلَّآ أَنْ يَّشَآءَ اللّٰهُ رَبُّ الْعٰلَمِيْنَ ﴿٣٠﴾

३०. तथा विश्वब्रह्माण्डका स्वामी अल्लाहको इच्छाबिना तिमीहरूले (कुनै कुरो) चाहन सक्दैनौ ।




## अल्-इन्फितार
(हिजरतअघि अवतरित)

| | |
|---|---|
| १. परम कृपालु, परम दयालु, अल्लाहको नाममा । | بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ﴿١﴾ |
| २. जब आकाश फुट्नेछ, | اِذَا السَّمَآءُ انْفَطَرَتْ ﴿٢﴾ |
| ३. तथा जब ताराहरू भर्नेछन्, | وَاِذَا الْكَوَاكِبُ انْتَثَرَتْ ﴿٣﴾ |
| ४. तथा जब नदीहरूलाई (नहरहरूमा) बगाइनेछ, | وَاِذَا الْبِحَارُ فُجِّرَتْ ﴿٤﴾ |
| ५. तथा जब चिहानहरूलाई उदाङ्गो पारिनेछ, | وَاِذَا الْقُبُوْرُ بُعْثِرَتْ ﴿٥﴾ |
| ६. (तब) प्रत्येक आत्माले, उसले अगाडि पठाएको कुरोलाई र पछि छाडेर आएको कुरोलाई जान्नेछ । | عَلِمَتْ نَفْسٌ مَّا قَدَّمَتْ وَاَخَّرَتْ ﴿٦﴾ |
| ७. ए मानिस, तँलाई आफ्ना कृपालु प्रतिपालकविरुद्ध कुन कुराले प्रोत्साहित गरेको छ, | يٰۤاَيُّهَا الْاِنْسَانُ مَا غَرَّكَ بِرَبِّكَ الْكَرِيْمِ ﴿٧﴾ |
| ८. (उनीविरुद्ध), जसले तँलाई सृष्टि गरे, र पूर्णता प्रदान गरे, त्यसपछि तँलाई यथायोग्य सन्तुलन प्रदान गरे? | الَّذِيْ خَلَقَكَ فَسَوّٰىكَ فَعَدَلَكَ ﴿٨﴾ |
| ९. उनले आफ्नो इच्छानुसारको आकृतिमा तँलाई गठन गरे । | فِيْۤ اَيِّ صُوْرَةٍ مَّا شَآءَ رَكَّبَكَ ﴿٩﴾ |
| १०. होइन, (अपितु) तिमीहरू (अन्तिम) निर्णयलाई अस्वीकार गर्छौ । | كَلَّا بَلْ تُكَذِّبُوْنَ بِالدِّيْنِ ﴿١٠﴾ |
| ११. परन्तु तिमीहरूमाथि संरक्षकहरू नियुक्त छन् । | وَاِنَّ عَلَيْكُمْ لَحٰفِظِيْنَ ﴿١١﴾ |

| | |
|---|---|
| १२. सम्माननीय छन्, ती लेखेर राख्नेहरू, | كِرَامًا كَاتِبِيْنَ ﴿١٢﴾ |
| १३. जसले तिमीहरूका (सम्पूर्ण) कार्यहरूका बारेमा जान्दछन् । | يَعْلَمُوْنَ مَا تَفْعَلُوْنَ ﴿١٣﴾ |
| १४. वस्तुतः सद्गुणी व्यक्तिहरू अनुग्रहअन्तर्गत हुनेछन्; | اِنَّ الْاَبْرَارَ لَفِيْ نَعِيْمٍ ﴿١٤﴾ |
| १५. तथा निशचय नै दुष्कर्मी व्यक्तिहरू नर्कमा हुनेछन्; | وَاِنَّ الْفُجَّارَ لَفِيْ جَحِيْمٍ ﴿١٥﴾ |
| १६. तिनीहरू निर्णयका दिन त्यहाँ जल्नेछन्; | يَّصْلَوْنَهَا يَوْمَ الدِّيْنِ ﴿١٦﴾ |
| १७. तथा तिनीहरू त्यहाँबाट उम्केर भाग्न (सक्ने) छैनन् । | وَمَا هُمْ عَنْهَا بِغَآئِبِيْنَ ﴿١٧﴾ |
| १८. तथा निर्णयको दिन के हो भन्ने कुराप्रति तिमीलाई कसले अवगत गराएको छ ! | وَمَآ اَدْرٰىكَ مَا يَوْمُ الدِّيْنِ ﴿١٨﴾ |
| १९. पुनः, निर्णयको दिन के हो भन्ने कुराप्रति तिमीलाई कसले अवगत गराएको छ ! | ثُمَّ مَآ اَدْرٰىكَ مَا يَوْمُ الدِّيْنِ ﴿١٩﴾ |
| २०. त्यस दिन जब कुनै आत्माले अर्को आत्मालाई कुनै प्रकारको लाभ पुऱ्याउन सक्नेछैन । तथा आदेश (पूर्णरूपमा) त्यसदिन अल्लाहकै (हातमा) हुनेछ । | يَوْمَ لَا تَمْلِكُ نَفْسٌ لِّنَفْسٍ شَيْـًٔا ۭ وَالْاَمْرُ يَوْمَئِذٍ لِّلّٰهِ ﴿٢٠﴾ |

سُورَةُ الْمُطَفِّفِينَ مَكِّيَّةٌ وَهِيَ مَعَ الْبَسْمَلَةِ سَبْعٌ وَثَلَاثُونَ آيَةً

## अल्-तत्फिफ्
(हिजरतअघि अवतरित)

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

وَيْلٌ لِّلْمُطَفِّفِينَ ②

२. माप तौल घटाएर दिने व्यक्तिहरूको सर्वनाश होस्;

الَّذِينَ إِذَا اكْتَالُوا عَلَى النَّاسِ يَسْتَوْفُونَ ③

३. ती व्यक्तिहरू यस्ता छन्, जब तिनीहरू अन्य व्यक्तिहरूबाट जोखेर लिन्छन्, तब पूरा पूरा जोखेर लिन्छन्;

وَإِذَا كَالُوهُمْ أَو وَّزَنُوهُمْ يُخْسِرُونَ ④

४. परन्तु जब तिनीहरू अन्य व्यक्तिहरूलाई नापेर दिन्छन् अथवा तिनीहरूका निम्ति जोख्छन्, तब (तिनीहरूलाई) घटाएर दिन्छन् ।

أَلَا يَظُنُّ أُولَٰئِكَ أَنَّهُم مَّبْعُوثُونَ ⑤

५. के यस्ता (व्यक्ति)हरू तिनीहरूलाई पुनर्जीवित गरिने छ भन्ने कुरालाई जान्दैनन्

لِيَوْمٍ عَظِيمٍ ⑥

६. एउटा डरलाग्दो दिनतर्फ,

يَوْمَ يَقُومُ النَّاسُ لِرَبِّ الْعَالَمِينَ ⑦

७. जुनदिन मानवजाति विश्व-ब्रह्माण्डका स्वामीसमक्ष खडा हुनेछन्?

كَلَّا إِنَّ كِتَابَ الْفُجَّارِ لَفِي سِجِّينٍ ⑧

८. होइन ! (अपितु) दुष्कर्मीको लेखा विवरण सिज्जिनमा छ ।

وَمَا أَدْرَاكَ مَا سِجِّينٌ ⑨

९. तथा सिज्जिन् के हो भनेर तिमीहरूलाई कसले अवगत गराएको छ?

كِتَابٌ مَّرْقُومٌ ⑩

१०. (यो) एउटा (विस्तृतरूपमा) लेखिएको पुस्तक (हो) ।

وَيْلٌ يَوْمَئِذٍ لِّلْمُكَذِّبِينَ ⑪

११. त्यसदिन ती अस्वीकारीहरूमाथि विपत्ति आउनेछ,

الَّذِينَ يُكَذِّبُونَ بِيَوْمِ الدِّينِ ⑫

१२. जसले निर्णयको दिनलाई अस्वीकार गर्छन् ।

وَمَا يُكَذِّبُ بِهٖٓ اِلَّا كُلُّ مُعْتَدٍ اَثِيْمٍ ۝١٢

१३. तथा त्यसलाई कसैले अस्वीकार गर्दैन, परन्तु हरेक सीमोल्लङ्घनकारी पापी व्यक्तिले (मात्र) ,

اِذَا تُتْلٰى عَلَيْهِ اٰيٰتُنَا قَالَ اَسَاطِيْرُ الْاَوَّلِيْنَ ۝١٣

१४. (त्यस व्यक्तिले), जसका सामुन्ने जब हाम्रा निर्देशनहरूको पाठ गरिन्छ, तब त्यसले भन्छः "अतीतका मानिसहरूका कथाहरू हुन् ।"

كَلَّا بَلْ ٜ رَانَ عَلٰى قُلُوْبِهِمْ مَّا كَانُوْا يَكْسِبُوْنَ ۝١٤

१५. होइन, अपितु तिनीहरूले कमाएका कुराहरूले तिनीहरूको हृदयलाई खियायुक्त तुल्याएको छ ।

كَلَّآ اِنَّهُمْ عَنْ رَّبِّهِمْ يَوْمَئِذٍ لَّمَحْجُوْبُوْنَ ۝١٥

१६. होइन, (अपितु) त्यसदिन तिनीहरूलाई तिनीहरूका प्रतिपालक(को दर्शन गर्न)बाट रोकिनेछ ।

ثُمَّ اِنَّهُمْ لَصَالُوا الْجَحِيْمِ ۝١٦

१७. त्यसपछि, निश्चयपूर्वक तिनीहरू अग्निमा जल्नेछन्,

ثُمَّ يُقَالُ هٰذَا الَّذِيْ كُنْتُمْ بِهٖ تُكَذِّبُوْنَ ۝١٧

१८. तब (तिनीहरूलाई के) भनिनेछ -भने), "यो त्यही नै हो जसलाई तिमीहरू अस्वीकार गर्ने गर्थ्यौ ।"

كَلَّآ اِنَّ كِتٰبَ الْاَبْرَارِ لَفِيْ عِلِّيِّيْنَ ۝١٨

१९. होइन ! अपितु सदगुणी व्यक्तिहरूको लेखा विवरण निश्चयपूर्वक इल्लियिन्मा रहेको छ ।

وَمَآ اَدْرٰىكَ مَا عِلِّيُّوْنَ ۝١٩

२०. तथा इल्लिय्यून के हो भन्ने कुराप्रति तिमीलाई कसले अवगत गराएको छ?

كِتٰبٌ مَّرْقُوْمٌ ۝٢٠

२१. (यो) एउटा (विस्तृत रूपमा) लेखिएको पुस्तक (हो) ।

يَّشْهَدُهُ الْمُقَرَّبُوْنَ ۝٢١

२२. (अल्लाहका) निर्वाचित व्यक्तिहरूले त्यसलाई देख्नेछन् ।

اِنَّ الْاَبْرَارَ لَفِيْ نَعِيْمٍ ۝٢٢

२३. निश्चय नै सद्गुणी व्यक्तिहरू अनुग्रहअन्तर्गत (हुनेछन्),

عَلَى الْاَرَآئِكِ يَنْظُرُوْنَ ۝٢٣

२४. पलङ्गमा (बसेर) हेरिरहनेछन् ।

| | |
|---|---|
| २५. तिनीहरूका मुहारमा तिमीले अनुग्रहको ताजगी देख्नेछौ । | تَعْرِفُ فِيْ وُجُوْهِهِمْ نَضْرَةَ النَّعِيْمِ ﴿٢٥﴾ |
| २६. तिनीहरूलाई पिउनका निम्ति शुद्ध सिलबन्द पेय (पदार्थ) प्रदान गरिनेछ, | يُسْقَوْنَ مِنْ رَّحِيْقٍ مَّخْتُوْمٍ ﴿٢٦﴾ |
| २७. त्यसको सिलबन्दी कस्तुरी (मिश्रित) हुनेछ– अतः अभिलाषा राख्ने व्यक्तिहरूले त्यसैको अभिलाषा राखून्– | خِتٰمُهٗ مِسْكٌ ۭ وَفِيْ ذٰلِكَ فَلْيَتَنَافَسِ الْمُتَنَافِسُوْنَ ﴿٢٦﴾ |
| २८. तसनिम(को पानी)मा त्यो मिलाइएको हुनेछ, | وَمِزَاجُهٗ مِنْ تَسْنِيْمٍ ﴿٢٨﴾ |
| २९. यस्तो एउटा (पानीको) मूल, जसबाट निर्वाचित व्यक्तिहरूले पिउँनेछन् । | عَيْنًا يَّشْرَبُ بِهَا الْمُقَرَّبُوْنَ ﴿٢٩﴾ |
| ३०. अपराधी बन्न पुगेका व्यक्तिहरू विश्वासीहरूमाथि ठट्टा गर्ने गर्थे; | اِنَّ الَّذِيْنَ اَجْرَمُوْا كَانُوْا مِنَ الَّذِيْنَ اٰمَنُوْا يَضْحَكُوْنَ ﴿٣٠﴾ |
| ३१. तथा जब तिनीहरूका निकटबाट आउ जाउ गर्थे, (तब) परस्पर एक अर्कातर्फ सङ्केत गर्थे । | وَاِذَا مَرُّوْا بِهِمْ يَتَغَامَزُوْنَ ﴿٣١﴾ |
| ३२. तथा जब तिनीहरू आफ्ना परिवारतर्फ फर्कन्थे -तब) अहङ्कार गर्दै फर्कन्थे; | وَاِذَا انْقَلَبُوْٓا اِلٰٓى اَهْلِهِمُ انْقَلَبُوْا فَكِهِيْنَ ﴿٣٢﴾ |
| ३३. तथा जब तिनीहरू उनीहरूलाई देख्थे (तब) भन्थे, "यिनीहरू ता निस्सन्देह पथभ्रष्ट व्यक्तिहरू हुन् ।" | وَاِذَا رَاَوْهُمْ قَالُوْٓا اِنَّ هٰٓؤُلَاۤءِ لَضَاۤلُّوْنَ ﴿٣٣﴾ |
| ३४. परन्तु तिनीहरूलाई उनीहरूमाथि निरीक्षक बनाएर पठाइएको थिएन । | وَمَآ اُرْسِلُوْا عَلَيْهِمْ حٰفِظِيْنَ ﴿٣٤﴾ |
| ३५. अतः त्यसदिन विश्वासीजन अविश्वासीहरूमाथि हाँस्नेछन्, | فَالْيَوْمَ الَّذِيْنَ اٰمَنُوْا مِنَ الْكُفَّارِ يَضْحَكُوْنَ ﴿٣٥﴾ |
| ३६. पलङ्गमाथि (बसेर) हेरिरहने छन् । | عَلَى الْاَرَاۤئِكِ يَنْظُرُوْنَ ﴿٣٦﴾ |
| ३७. के अविश्वासीहरूलाई तिनीहरूले गरेका कार्यहरूको (उपयुक्त) बदला प्राप्त | هَلْ ثُوِّبَ الْكُفَّارُ مَا كَانُوْا يَفْعَلُوْنَ ﴿٣٦﴾ ع |

سُوْرَةُ الْاِنْشِقَاقِ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ سِتٌّ وَّعِشْرُوْنَ اٰيَةً

## अल्-इन्शिकाक़
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

اِذَا السَّمَآءُ انْشَقَّتْ ②

२. जब आकाश टुक्रा टुक्रा भएर फुट्नेछ,

وَاَذِنَتْ لِرَبِّهَا وَحُقَّتْ ③

३. तथा आफ्ना प्रतिपालकतर्फ कान लगाउनेछ–र (त्यही नै) त्यसको कर्तव्य ठहऱ्याइएको छ ।

وَاِذَا الْاَرْضُ مُدَّتْ ④

४. तथा जब पृथ्वीलाई फैलाइनेछ,

وَاَلْقَتْ مَا فِيْهَا وَتَخَلَّتْ ⑤

५. तथा त्यसले आफूभित्र रहेका (सम्पूर्ण) वस्तुहरूलाई बाहिर निकालेर फ्याँक्नेछ, र खाली हुनेछ;

وَاَذِنَتْ لِرَبِّهَا وَحُقَّتْ ⑥

६. तथा आफ्ना प्रतिपालकतर्फ कान लगाउनेछ–तथा (त्यही नै) त्यसको कर्तव्य ठहऱ्याइएको छ–

يٰۤاَيُّهَا الْاِنْسَانُ اِنَّكَ كَادِحٌ اِلٰى رَبِّكَ كَدْحًا فَمُلٰقِيْهِ ⑦

७. ए मानिस, तँ अति परिश्रमका साथ आफ्ना प्रतिपालकतर्फ अघि बढ्ने गर्छस्; त्यसपछि तँले उन्लाई भेट्नेछस् ।

فَاَمَّا مَنْ اُوْتِيَ كِتٰبَهٗ بِيَمِيْنِهٖ ⑧

८. त्यसपछि जुन व्यक्तिलाई उसको (लेखा)पुस्तिका त्यसका दाहिने हातमा दिइनेछ,

فَسَوْفَ يُحَاسَبُ حِسَابًا يَّسِيْرًا ⑨

९. त्यससित भने शीघ्र नै सरल हिसाब लिइनेछ,

وَّيَنْقَلِبُ اِلٰۤى اَهْلِهٖ مَسْرُوْرًا ⑩

१०. तथा त्यो व्यक्ति प्रसन्नताका साथ आफ्ना परिवारतर्फ फर्कनेछ

وَاَمَّا مَنْ اُوْتِيَ كِتٰبَهٗ وَرَآءَ ظَهْرِهٖ ⑪

११. परन्तु जसलाई उसको (लेखा)पुस्तिका उसको पिठ्यूँपछिबाट दिइनेछ,

فَسَوْفَ يَدْعُوْا ثُبُوْرًا ⑪

१२. त्यसले शीघ्र नै विनाशलाई निम्त्याउने छ,

وَّيَصْلٰى سَعِيْرًا ⑫

१३. तथा त्यो दन्कदो अग्निमा जल्नेछ ।

اِنَّهٗ كَانَ فِيْٓ اَهْلِهٖ مَسْرُوْرًا ⑬

१४. वस्तुतः (त्यसअघि) त्यो व्यक्ति आफ्ना परिवारसित प्रसन्नताका साथ रहने गर्थ्यो

اِنَّهٗ ظَنَّ اَنْ لَّنْ يَّحُوْرَ ⑭

१५. (अल्लाहतर्फ) कदापि फर्कनेछैन भन्ने उसको धारणा थियो ।

بَلٰٓى ۚ اِنَّ رَبَّهٗ كَانَ بِهٖ بَصِيْرًا ⑮

१६. हो ! निश्चय नै उसका प्रतिपालकले उसलाई राम्ररी देखिरहेछन् ।

فَلَآ اُقْسِمُ بِالشَّفَقِ ⑯

१७. परन्तु होइन. ! म गोधूलिपखलाई साक्षी राख्छु,

وَالَّيْلِ وَمَا وَسَقَ ⑰

१८. तथा रात्रिलाई, र त्यसले ढाकेका सम्पूर्ण वस्तुहरूलाई,

وَالْقَمَرِ اِذَا اتَّسَقَ ⑱

१९. तथा पूर्णमासीको चन्द्रमालाई,

لَتَرْكَبُنَّ طَبَقًا عَنْ طَبَقٍ ⑲

२०. अर्थात्, तिमीहरू निस्सन्देह एक अवस्थाबाट अर्को अवस्थातर्फ बढ्नेछौ ।

فَمَا لَهُمْ لَا يُؤْمِنُوْنَ ⑳

२१. अतः तिनीहरूलाई के भएको छ र तिनीहरू विश्वास गर्दैनन्,

وَاِذَا قُرِئَ عَلَيْهِمُ الْقُرْاٰنُ لَا يَسْجُدُوْنَ ㉑

२२. तथा जब तिनीहरूसमक्ष कुरानको पाठ गरिन्छ, तिनीहरू साष्टाङ्ग प्रणाम गर्दैनन्;

بَلِ الَّذِيْنَ كَفَرُوْا يُكَذِّبُوْنَ ㉒

२३. त्यस विपरीत, ती अविश्वासीहरू त्यसलाई) अस्वीकार गर्छन् ।

وَاللّٰهُ اَعْلَمُ بِمَا يُوْعُوْنَ ㉓

२४. तथा तिनीहरूले जुन कुरा (आफ्नो हृदयभित्र) लुकाएका छन् अल्लाहले त्यसलाई राम्ररी जान्दछन् ।

فَبَشِّرْهُمْ بِعَذَابٍ اَلِيْمٍ ㉔

२५. अतः तिनीहरूलाई पीडादायक दण्डको खबर देऊ ।

اِلَّا الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ لَهُمْ اَجْرٌ غَيْرُ مَمْنُوْنٍ ㉕

२६. परन्तु जसले विश्वास गर्छन् र पुण्यकार्य गर्छन्, तिनीहरूलाई भने अपार प्रतिदान मिल्नेछ ।

سُوْرَةُ الْبُرُوْجِ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ ثَلٰثٌ وَّعِشْرُوْنَ اٰيَةً

## अल्-बुरूज
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

وَالسَّمَآءِ ذَاتِ الْبُرُوْجِ ②

२. (ताराहरूको) प्रासादयुक्त आकाशको शपथ,

وَالْيَوْمِ الْمَوْعُوْدِ ③

३. तथा प्रतिश्रुत दिनको (शपथ),

وَشَاهِدٍ وَّمَشْهُوْدٍ ④

४. तथा साक्षी दिने व्यक्ति र जसको साक्षी दिइएको छ त्यस व्यक्तिको (शपथ) ।

قُتِلَ اَصْحٰبُ الْاُخْدُوْدِ ⑤

५. खाडलका निवासीहरूको सत्यनाश होस(

النَّارِ ذَاتِ الْوَقُوْدِ ⑥

६. (अर्थात्), इन्धनपूर्ण अग्नि–

اِذْ هُمْ عَلَيْهَا قُعُوْدٌ ⑦

७. जब तिनीहरू त्यसका छेउमा बसेका थिए,

وَّهُمْ عَلٰى مَا يَفْعَلُوْنَ بِالْمُؤْمِنِيْنَ شُهُوْدٌ ⑧

८. तथा विश्वासीहरूसित आफूले गरेको व्यवहारलाई तिनीहरू जान्दथे ।

وَمَا نَقَمُوْا مِنْهُمْ اِلَّآ اَنْ يُّؤْمِنُوْا بِاللّٰهِ الْعَزِيْزِ الْحَمِيْدِ ⑨

९. तथा तिनीहरू उनीहरूलाई केवल उनीहरूले सर्वशक्तिमान, परम प्रशंसनीय, अल्लाहमाथि विश्वास गरेकै कारण घृणा गर्थे,

الَّذِيْ لَهٗ مُلْكُ السَّمٰوٰتِ وَالْاَرْضِ ۗ وَاللّٰهُ عَلٰى كُلِّ شَيْءٍ شَهِيْدٌ ⑩

१०. उनै (अल्लाहमाथि), जसको अधिनमा आकाशमण्डल र पृथ्वीको राज्य रहेको छ; तथा सम्पूर्ण वस्तुहरूमाथि अल्लाह साक्षी रहेका छन् ।

اِنَّ الَّذِيْنَ فَتَنُوا الْمُؤْمِنِيْنَ وَالْمُؤْمِنٰتِ ثُمَّ لَمْ يَتُوْبُوْا فَلَهُمْ عَذَابُ جَهَنَّمَ وَلَهُمْ عَذَابُ الْحَرِيْقِ ⑪

११. जसले विश्वासी पुरुष र विश्वासी महिलाहरूलाई सताउँछन् र त्यसपछि प्रायश्चित गर्दैनन्, तिनीहरूलाई अवश्य नर्कको दण्ड मिल्नेछ, र तिनीहरूलाई

जलाउने प्रकृतिको दण्ड मिल्नेछ ।

إِنَّ الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ لَهُمْ جَنَّاتٌ تَجْرِي مِن تَحْتِهَا الْأَنْهَارُ ذَٰلِكَ الْفَوْزُ الْكَبِيرُ ﴿١١﴾

११. परन्तु विश्वास गर्ने र पुण्यकार्य गर्ने व्यक्तिहरूलाई भने यस्ता बगैंचाहरू प्राप्त हुनेछन्, जसमनि नहरहरू बग्ने गर्छन् । त्यही नै ठूलो कृतकार्यता रहेको छ ।

إِنَّ بَطْشَ رَبِّكَ لَشَدِيدٌ ﴿١٢﴾

१२. निश्चय नै तिम्रा प्रभुको पकड अति कठोर हुन्छ ।

إِنَّهُ هُوَ يُبْدِئُ وَيُعِيدُ ﴿١٣﴾

१३. ती उनी नै हुन्, जसले प्रारम्भ गर्छन् र दोहोऱ्याउँछन्;

وَهُوَ الْغَفُورُ الْوَدُودُ ﴿١٤﴾

१४. तथा उनी परम क्षमाशील, परम स्नेहशील छन्;

ذُو الْعَرْشِ الْمَجِيدُ ﴿١٥﴾

१५. उनी परम सिंहासनका स्वामी, सम्मानका स्वामी रहेका छन्;

فَعَّالٌ لِّمَا يُرِيدُ ﴿١٦﴾

१६. (उनी) आफूले चाहेको कार्य समापन गरेरै छाड्ने (गर्छन्) ।

هَلْ أَتَاكَ حَدِيثُ الْجُنُودِ ﴿١٧﴾

१७. के तिमीलाई लस्करहरूको खबर प्राप्त भएको छैन र?

فِرْعَوْنَ وَثَمُودَ ﴿١٨﴾

१८. फिरौन र समूदका (लस्करहरू को)?

بَلِ الَّذِينَ كَفَرُوا فِي تَكْذِيبٍ ﴿١٩﴾

१९. होइन, अपितु अविश्वासीहरू (सत्यलाई) अस्वीकार गर्नमा (हठधर्मीपूर्वक) लागिरहेछन् ।

وَاللَّهُ مِن وَرَائِهِم مُّحِيطٌ ﴿٢٠﴾

२०. तथा अल्लाहले तिनीहरूलाई त्यस शैलीले घेरिरहेछन् जसबारे तिनीहरूलाई केही ज्ञान छैन ।

بَلْ هُوَ قُرْآنٌ مَّجِيدٌ ﴿٢١﴾

२१. होइन, अपितु यो एउटा गौरवपूर्ण कुरान हो,

فِي لَوْحٍ مَّحْفُوظٍ ﴿٢٢﴾

२२. एउटा सुरक्षित पाटीमा यो रहेको छ ।




## अल्-तारिक्

(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परक कृपालु, परम दयालु, अल्लाहको नाममा ।

وَالسَّمَآءِ وَالطَّارِقِ ①

२. आकाशको र बिहानिपखको ताराको शपथ–

وَمَآ اَدْرٰىكَ مَا الطَّارِقُ ②

३. तथा बिहानिपखको तारा के हो भनेर तिमीलाई कसले अवगत गराएको छ?

النَّجْمُ الثَّاقِبُ ③

४. (त्यो) एउटा तीक्ष्ण चमकयुक्त नक्षत्र (रहेको) छ ।

اِنْ كُلُّ نَفْسٍ لَّمَّا عَلَيْهَا حَافِظٌ ④

५. कुनै यस्तो आत्मा छैन जसमाथि एउटा संरक्षक नियुक्त नहोस् ।

فَلْيَنْظُرِ الْاِنْسَانُ مِمَّ خُلِقَ ⑤

६. अतः मानिसले, उसलाई कुन वस्तुबाट सृष्टि गरिएको छ भन्ने कुराको विवेचना गरोस् ।

خُلِقَ مِنْ مَّآءٍ دَافِقٍ ⑥

७. उसलाई एउटा तीब्र गतिले प्रवाहित हुने पानीबाट सृष्टि गरिएको छ,

يَّخْرُجُ مِنْ بَيْنِ الصُّلْبِ وَالتَّرَآئِبِ ⑦

८. जुन (पदार्थ) पिठ्यूँ र छातीको हड्डीको बीचबाट निस्कने गर्छ ।

اِنَّهٗ عَلٰى رَجْعِهٖ لَقَادِرٌ ⑧

९. उनमा त्यसलाई पुनर्जीवित गर्ने शक्ति अवश्य रहेको छ ।

يَوْمَ تُبْلَى السَّرَآئِرُ ⑨

१०. त्यसदिन जब गुप्त भेदहरू प्रकट गरिनेछन् ।

فَمَا لَهٗ مِنْ قُوَّةٍ وَّلَا نَاصِرٍ ⑩

११. तब त्यस (मानिस)मा न शक्ति रहनेछ न त कोही (उसको) सहयोगी नै हुनेछ ।

وَالسَّمَآءِ ذَاتِ الرَّجْعِ ⑪

१२. त्यस आकाशको शपथ, जो बारम्बार (वर्षा लिएर) फर्कने गर्छ,

وَالْاَرْضِ ذَاتِ الصَّدْعِ ⑫

१३. तथा त्यस पृथ्वीको शपथ, जसले विभिन्न उद्‌भिदहरू बाहिर निकाल्ने गर्छ,

اِنَّهٗ لَقَوْلٌ فَصْلٌ ⑬

१४. यो निश्चयपूर्वक निर्णायक वाणी रहेको छ,

وَّمَا هُوَ بِالْهَزْلِ ⑭

१५. तथा यो कुनै व्यर्थ कुरो होइन ।

اِنَّهُمْ يَكِيْدُوْنَ كَيْدًا ⑮

१६. तिनीहरू निश्चय नै एउटा योजना बनाइरहेछन् ,

وَّاَكِيْدُ كَيْدًا ⑯

१७. तथा म (पनि) एउटा प्रतिकारात्मक योजना बनाइरहेछु ।

فَمَهِّلِ الْكٰفِرِيْنَ اَمْهِلْهُمْ رُوَيْدًا ⑰

१८. अतः अविश्वासीहरूलाई अवसर देऊ । सुन, तिनीहरूलाई केही दिनको समय देऊ ।

سُوْرَةُ الْاَعْلٰى مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ عِشْرُوْنَ اٰيَةً

## अल्-आ'ला
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

سَبِّحِ اسْمَ رَبِّكَ الْاَعْلَى ②

२. तिमी आफ्ना ती गौरवमय प्रतिपालकको नामको पवित्रता वर्णन गर,

الَّذِيْ خَلَقَ فَسَوّٰى ③

३. जसले सृष्टि गरे र पूर्णता (प्रदान) गरे,

وَالَّذِيْ قَدَّرَ فَهَدٰى ④

४. तथा जसले अनुमान लगाए र मार्ग प्रदर्शन गरे,

وَالَّذِيْٓ اَخْرَجَ الْمَرْعٰى ⑤

५. तथा जसले पृथ्वीबाट घाँस पात उब्जाए,

فَجَعَلَهٗ غُثَآءً اَحْوٰى ⑥

६. त्यसपछि त्यसलाई कालो रङ्गको फोहोर मैला बनाए,

سَنُقْرِئُكَ فَلَا تَنْسٰٓى ⑦

७. हामी तिमीलाई (कुरान) पढाउँनेछौं, र तिमीले (त्यसलाई) भुल्नेछैनौ,

اِلَّا مَا شَآءَ اللّٰهُ ۭ اِنَّهٗ يَعْلَمُ الْجَهْرَ وَمَا يَخْفٰى ⑧

८. सिवाय अल्लाहको इच्छानुसार । उनी निश्चय नै प्रकट(मा रहेका) र गुप्तरहेका सबै कुराहरूलाई जान्दछन् ।

وَنُيَسِّرُكَ لِلْيُسْرٰى ⑨

९. तथा तिम्रा निम्ति हामी (हरेक) अनुकूल अवसरलाई सरल तुल्याउँनेछौं ।

فَذَكِّرْ اِنْ نَّفَعَتِ الذِّكْرٰى ⑩

१०. अतः उपदेश गर्दै जाउ, उपदेश गर्नु लाभदायक हुन्छ ।

سَيَذَّكَّرُ مَنْ يَّخْشٰى ⑪

११. जो व्यक्ति अल्लाहसित डराउँछ त्यसले अवश्य अर्ती लिनेछ;

وَيَتَجَنَّبُهَا الْأَشْقَى ﴿١١﴾

१२. परन्तु (त्यो) कर्मखोटी व्यक्ति भने त्यसबाट विमुख हुनेछ,

الَّذِي يَصْلَى النَّارَ الْكُبْرَى ﴿١٢﴾

१३. जो भयानक अग्निमा दाखिल हुनेछ ।

ثُمَّ لَا يَمُوتُ فِيهَا وَلَا يَحْيَى ﴿١٣﴾

१४. तब त्यहाँ त्यो व्यक्ति न मर्नेछ न त जीवित नै रहनेछ ।

قَدْ أَفْلَحَ مَنْ تَزَكَّى ﴿١٤﴾

१५. वस्तुतः त्यो व्यक्ति साँच्चै नै कृतार्थ हुन्छ जसले स्वयम्लाई पवित्र तुल्याउँछ,

وَذَكَرَ اسْمَ رَبِّهِ فَصَلَّى ﴿١٥﴾

१६. तथा आफ्ना प्रतिपालकको नाम जप्ने गर्छ र नमाज अनुष्ठान गर्छ ।

بَلْ تُؤْثِرُونَ الْحَيَاةَ الدُّنْيَا ﴿١٦﴾

१७. परन्तु तिमीहरू यस सांसारिक जीवनलाई नै प्राथमिकता दिन्छौ,

وَالْآخِرَةُ خَيْرٌ وَأَبْقَى ﴿١٧﴾

१८. वस्तुतः परलोक नै उत्तम र अधिक स्थायी रहेको छ ।

إِنَّ هَٰذَا لَفِي الصُّحُفِ الْأُولَى ﴿١٨﴾

१९. निस्सन्देह यही कुरो पहिलाका ग्रन्थहरूमा पनि (सिकाइएको) छ–

صُحُفِ إِبْرَاهِيمَ وَمُوسَى ﴿١٩﴾

२०. (अर्थात्), इब्राहिम र मुसाका ग्रन्थहरूमा ।



## अल्-गाशिया:

(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

هَلْ اَتٰىكَ حَدِيْثُ الْغَاشِيَةِ ②

२. के तिमीलाई त्यो सर्वत्र छाउने (विपत्ति)को खबर प्राप्त भएको छ?

وُجُوْهٌ يَّوْمَئِذٍ خَاشِعَةٌ ③

३. त्यसदिन (केही) मुहारहरू झुकेका हुनेछन्;

عَامِلَةٌ نَّاصِبَةٌ ④

४. परिश्रम गरिरहेका र थकित हुनेछन् ।

تَصْلٰى نَارًا حَامِيَةً ⑤

५. (तिनीहरू) प्रज्वलित अग्निमा दाखिल हुनेछन्;

تُسْقٰى مِنْ عَيْنٍ اٰنِيَةٍ ⑥

६. (तथा) उम्लदो पानीको मूलबाट (तिनीहरूलाई) पानी पियाइनेछ;

لَيْسَ لَهُمْ طَعَامٌ اِلَّا مِنْ ضَرِيْعٍ ⑦

७. तिनीहरूलाई सुकेको, तितो र काँटेदार घाँसपातबाहेक अन्य केही खाद्य मिल्नेछैन,

لَّا يُسْمِنُ وَلَا يُغْنِيْ مِنْ جُوْعٍ ⑧

८. त्यसले न मोटो पार्नेछ, न त भोक मार्नेछ ।

وُجُوْهٌ يَّوْمَئِذٍ نَّاعِمَةٌ ⑨

९. तथा (केही) मुहारहरू त्यसदिन प्रसन्न मुद्रामा हुनेछन्;

لِّسَعْيِهَا رَاضِيَةٌ ⑩

१०. आफ्नो परिश्रमप्रति सन्तुष्ट हुनेछन्,

فِيْ جَنَّةٍ عَالِيَةٍ ⑪

११. एउटा यस्तो उच्च बगैंचामा (स्वर्गमा),

لَّا تَسْمَعُ فِيْهَا لَاغِيَةً ⑫

१२. जसमा तिमीलें कुनै लघु कुरो सुन्नेछैनौ;

فِيْهَا عَيْنٌ جَارِيَةٌ ⑬

१३. त्यहाँ एउटा बग्दो (पानीको) मुल हुनेछ,

فِيْهَا سُرُرٌ مَّرْفُوْعَةٌ ﴿١٣﴾

१४. त्यहाँ उच्च पलङ्गहरू राखिएका हुनेछन्,

وَّ اَكْوَابٌ مَّوْضُوْعَةٌ ﴿١٤﴾

१५. तथा सुराहीहरू मिलाएर राखिएका हुनेछन्,

وَّ نَمَارِقُ مَصْفُوْفَةٌ ﴿١٥﴾

१६. तथा सा-साना सिरानीहरू (उत्तम रूपमा) सजाएर राखिएका हुनेछन्,

وَّ زَرَابِيُّ مَبْثُوْثَةٌ ﴿١٦﴾

१७. तथा (सुन्दर रूपमा) गलैंचाहरू बिछ्याएका हुनेछन् ।

اَفَلَا يَنْظُرُوْنَ اِلَى الْاِبِلِ كَيْفَ خُلِقَتْ ﴿١٧﴾

१८. अत: के तिनीहरू ऊँटतर्फ, त्यसलाई कसरी सृष्टि गरिएको भनी ध्यानपूर्वक हेर्दैनन्?

وَاِلَى السَّمَآءِ كَيْفَ رُفِعَتْ ﴿١٨﴾

१९. तथा आकाशतर्फ, त्यसलाई कसरी उच्च तुल्याइएको छ (भनी)?

وَاِلَى الْجِبَالِ كَيْفَ نُصِبَتْ ﴿١٩﴾

२०. तथा पर्वतहरूतर्फ, कसरी तिनीहरूलाई दृढतापूर्वक गाडिएको छ?

وَاِلَى الْاَرْضِ كَيْفَ سُطِحَتْ ﴿٢٠﴾

२१. तथा पृथ्वीतर्फ, त्यसलाई कसरी फैलाइएको छ (भनी हेर्दैनन्)?

فَذَكِّرْ اِنَّمَآ اَنْتَ مُذَكِّرٌ ﴿٢١﴾

२२. अत: तिमी उपदेश देऊ, किनभने तिमी एकजना उपदेशक हौ;

لَسْتَ عَلَيْهِمْ بِمُصَّيْطِرٍ ﴿٢٢﴾

२३. तिमी तिनीहरूमाथि निरीक्षक(स्वरूप नियुक्त) छैनौ ।

اِلَّا مَنْ تَوَلّٰى وَكَفَرَ ﴿٢٣﴾

२४. परन्तु जो व्यक्ति विमुख हुन्छ, र अविश्वास गर्छ,

فَيُعَذِّبُهُ اللّٰهُ الْعَذَابَ الْاَكْبَرَ ﴿٢٤﴾

२५. त्यसलाई अल्लाहले ठूलो दण्ड दिनेछन् ।

اِنَّ اِلَيْنَآ اِيَابَهُمْ ﴿٢٥﴾

२६. हामीतर्फ नै तिनीहरूको प्रत्यावर्तन हुनेछ,

ثُمَّ اِنَّ عَلَيْنَا حِسَابَهُمْ ﴿٢٦﴾

२७. तब, तिनीहरूको हिसाब लिने जिम्मेवारी (पनि) हाम्रै रहेको छ ।




## अल्-फजर्
(हिजरतअघि अवतरित)

| | |
|---|---|
| १. परम कृपालु, परम दयालु, अल्लाहको नाममा। | بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ① |
| २. प्रातःकालको शपथ, | وَالْفَجْرِ ② |
| ३. तथा दसवटा रात्रिहरूको, | وَلَيَالٍ عَشْرٍ ③ |
| ४. तथा जोर र बिजोरको, | وَّالشَّفْعِ وَالْوَتْرِ ④ |
| ५. तथा त्यस रात्रिको शपथ जब त्यो (आफ्नो समाप्तितर्फ) ढल्कन्छ; | وَالَّيْلِ اِذَا يَسْرِ ⑤ |
| ६. के बुद्धिमान व्यक्तिका निम्ति यसमा एउटा ठोस प्रमाण छैन र? | هَلْ فِيْ ذٰلِكَ قَسَمٌ لِّذِيْ حِجْرٍ ⑥ |
| ७. आद जातिसित तिम्रा प्रतिपालकले कस्तो व्यवहार गरेका थिए भन्ने कुरा तिमीलाई थाहा छैन– | اَلَمْ تَرَ كَيْفَ فَعَلَ رَبُّكَ بِعَادٍ ⑦ |
| ८. (अर्थात्) इराम(का जातिसित) जुन उच्च उच्च प्रासादका स्वामी थिए, | اِرَمَ ذَاتِ الْعِمَادِ ⑧ |
| ९. त्यस क्षेत्रमा तिनीहरूका प्रासादहरू सदृश (भवनहरू) त्योभन्दा पहिला कहिल्यै निर्माण गरिएका थिएनन्। | الَّتِيْ لَمْ يُخْلَقْ مِثْلُهَا فِي الْبِلَادِ ⑨ |
| १०. तथा समूद(सित) जो उपत्यकामा पहरो तोडेर घर बनाउने गर्थे, | وَثَمُوْدَ الَّذِيْنَ جَابُوا الصَّخْرَ بِالْوَادِ ⑩ |
| ११. तथा विस्तृत शिविरहरूको स्वामी फिरौन (सित)? | وَفِرْعَوْنَ ذِى الْاَوْتَادِ ⑪ |
| १२. जसले देशमा अत्याचार(पूर्ण | الَّذِيْنَ طَغَوْا فِي الْبِلَادِ ⑫ |

कार्यहरू) गर्ने गर्थे,

فَأَكْثَرُوا فِيهَا الْفَسَادَ ﴿١٢﴾

१३. तथा त्यहाँ अत्यधिक भ्रष्टाचार फैलाएका थिए ।

فَصَبَّ عَلَيْهِمْ رَبُّكَ سَوْطَ عَذَابٍ ﴿١٣﴾

१४. तब तिम्रा प्रतिपालकले तिनीहरू माथि दण्डको कोर्रा बर्साए ।

إِنَّ رَبَّكَ لَبِالْمِرْصَادِ ﴿١٤﴾

१५. तिम्रा प्रतिपालक निश्चय नै अवसरको प्रतीक्षामा छन् ।

فَأَمَّا الْإِنْسَانُ إِذَا مَا ابْتَلَاهُ رَبُّهُ فَأَكْرَمَهُ وَنَعَّمَهُ فَيَقُولُ رَبِّي أَكْرَمَنِ ﴿١٥﴾

१६. मानिसको जात, कस्तो (रहेको छ) भने, जब त्यसका प्रतिपालकले त्यसलाई जाँच्छन् र त्यसलाई सम्मानित तुल्याउँछन् तथा त्यसमाथि अनुग्रह वर्षण गर्छन्, तब त्यो मानिस भन्छ, "मेरा प्रतिपालकले मेरो सम्मान गरे ।"

وَأَمَّا إِذَا مَا ابْتَلَاهُ فَقَدَرَ عَلَيْهِ رِزْقَهُ فَيَقُولُ رَبِّي أَهَانَنِ ﴿١٦﴾

१७. परन्तु जब उनले त्यसलाई जाँच्छन् र त्यसका जीवका(का साधनहरू) कम गरिदिन्छन्, तब त्यो (मानिस) भन्छ, "मेरा प्रतिपालकले मेरो अपमान गरे ।"

كَلَّا بَلْ لَا تُكْرِمُونَ الْيَتِيمَ ﴿١٧﴾

१८. होइन, (अपितु) तिमीहरू टुहुराको सम्मान गर्दैनौ,

وَلَا تَحَاضُّونَ عَلَى طَعَامِ الْمِسْكِينِ ﴿١٨﴾

१९. तथा तिमीहरू (परस्पर) एक-अर्कालाई गरीबलाई भोजन गराउन प्रेरित गर्दैनौ,

وَتَأْكُلُونَ التُّرَاثَ أَكْلًا لَمًّا ﴿١٩﴾

२०. तथा (अन्य व्यक्तिहरूको) अंश (पुर्ख्यौली सम्पत्ति) पूर्णरूपमा भक्षण गर्ने गर्छौ,

وَتُحِبُّونَ الْمَالَ حُبًّا جَمًّا ﴿٢٠﴾

२१. तथा सम्पत्तिप्रति तिमीहरूको अत्यधिक मोह रहेको छ ।

كَلَّا إِذَا دُكَّتِ الْأَرْضُ دَكًّا دَكًّا ﴿٢١﴾

२२. होइन, (अपितु) जब पृथ्वीलाई पूर्ण

रूपमा टुक्रा टुक्रा तुल्याइनेछ;

وَّجَآءَ رَبُّكَ وَالْمَلَكُ صَفًّا صَفًّا ۝٢٢

२३. तथा तिम्रा प्रतिपालक आउनेछन्, र फरिस्ताहरू (पनि) पङ्क्तिवद्ध रूपमा खडा रहनेछन्;

وَجِايْٓءَ يَوْمَئِذٍۭ بِجَهَنَّمَ ۙ يَوْمَئِذٍ يَّتَذَكَّرُ الْاِنْسَانُ وَاَنّٰى لَهُ الذِّكْرٰى ۝٢٣

२४. तथा त्यसदिन नर्कलाई निकट ल्याइनेछ; त्यसदिन मानिसले (अल्लाहको) स्मरण गर्नेछ, परन्तु उसको स्मरणले उसलाई के फाइदा दिनेछ र?

يَقُوْلُ يٰلَيْتَنِيْ قَدَّمْتُ لِحَيَاتِيْ ۝٢٤

२५. उसले भन्नेछ, "हाय, यदि मैले मेरो -यहाँको) जीवनको लागि (केही उत्तम कर्महरू) पठाएको भए !"

فَيَوْمَئِذٍ لَّا يُعَذِّبُ عَذَابَهٗٓ اَحَدٌ ۝٢٥

२६. अत: त्यसदिन त्यसलाई उनको दण्डजस्तो अन्य कसैले दण्ड दिनेछैन,

وَّلَا يُوْثِقُ وَثَاقَهٗٓ اَحَدٌ ۝٢٦

२७. तथा उनको बन्धन जस्तो अन्य कसैको बन्धन हुनेछैन;

يٰٓاَيَّتُهَا النَّفْسُ الْمُطْمَئِنَّةُ ۝٢٧

२८. (तथा) हे तिमी सन्तुष्टि प्राप्त आत्मा !

ارْجِعِيْٓ اِلٰى رَبِّكِ رَاضِيَةً مَّرْضِيَّةً ۝٢٨

२९. तिमी (उनीसित) पूर्ण सन्तुष्ट (र) उनी (तिमीसित) पूर्ण सन्तुष्ट रहेको अवस्थामा आफ्ना प्रतिपालकतर्फ फर्क ।

فَادْخُلِيْ فِيْ عِبَادِيْ ۝٢٩

३०. अत: तिमी मेरा सेवकहरूमा प्रवेश गर,

وَادْخُلِيْ جَنَّتِيْ ۝٣٠

३१. तथा तिमी मेरो बगैंचा (स्वर्ग)मा प्रवेश गर ।

سُوْرَةُ الْبَلَدِ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ اِحْدٰى وَعِشْرُوْنَ اٰيَةً

## अल्-बलद्
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

لَآ اُقْسِمُ بِهٰذَا الْبَلَدِ ②

२. होइन, अपितु म यस नगरको शपथ खान्छु–

وَاَنْتَ حِلٌّ بِهٰذَا الْبَلَدِ ③

३. तथा तिमी यस नगरमा उत्रनेछौ–

وَوَالِدٍ وَّمَا وَلَدَ ④

४. तथा (म) पिता र उसको पुत्रको (शपथ खान्छु),

لَقَدْ خَلَقْنَا الْاِنْسَانَ فِيْ كَبَدٍ ⑤

५. हामीले मानिसलाई निश्चय नै कठिन परिश्रम (गर्न)का निम्ति सृष्टि गरेका हौं ।

اَيَحْسَبُ اَنْ لَّنْ يَّقْدِرَ عَلَيْهِ اَحَدٌ ⑥

६. के उसमाथि कसैको प्रतिपालकत्व रहेको छैन भन्ने उसले ठान्छ?

يَقُوْلُ اَهْلَكْتُ مَالًا لُّبَدًا ⑦

७. उसले भन्छ, "मैले विशाल सम्पत्ति खर्च गरेको छु ।"

اَيَحْسَبُ اَنْ لَّمْ يَرَهٗٓ اَحَدٌ ⑧

८. के उसलाई कसैले देखिरहेको छैन भनी उसले ठानेको छ?

اَلَمْ نَجْعَلْ لَّهٗ عَيْنَيْنِ ⑨

९. के हामीले त्यसलाई दुईवटा नेत्रहरू दिएका छैनौं,

وَلِسَانًا وَّشَفَتَيْنِ ⑩

१०. तथा एउटा जिब्रो र दुईवटा ओठहरू (दिएका छैनौं)?

وَهَدَيْنٰهُ النَّجْدَيْنِ ⑪

११. तथा हामीले त्यसलाई सम्माननीय दर्जामा पुग्ने मार्गहरू देखायौं ।

فَلَا اقْتَحَمَ الْعَقَبَةَ ⑫

१२. परन्तु त्यसले 'अक़बा:' को मार्ग

अवलम्बन गरेन ।

وَمَآ اَدْرٰىكَ مَا الْعَقَبَةُ ﴿١٢﴾

१३. तथा 'अक़बा:' के हो भनेर तिमीलाई कसले अवगत गराएको छ र?

فَكُّ رَقَبَةٍ ﴿١٣﴾

१४. (त्यो) दास मुक्त गर्नु (हो) ।

اَوْ اِطْعٰمٌ فِيْ يَوْمٍ ذِيْ مَسْغَبَةٍ ﴿١٤﴾

१५. अथवा भोकको दिन खाना खुवाउनु हो ।

يَّتِيْمًا ذَا مَقْرَبَةٍ ﴿١٥﴾

१६. निकट सम्बन्धी टुहुरालाई,

اَوْ مِسْكِيْنًا ذَا مَتْرَبَةٍ ﴿١٦﴾

१७. अथवा धुलो माटोमा रहेको गरीब मानिसलाई ।

ثُمَّ كَانَ مِنَ الَّذِيْنَ اٰمَنُوْا وَتَوَاصَوْا بِالصَّبْرِ وَتَوَاصَوْا بِالْمَرْحَمَةِ ﴿١٧﴾

१८. पुन: त्यो व्यक्ति ती विश्वासी व्यक्तिहरूमध्येको (एक) होस्, जसले परस्पर एक अर्कालाई धैर्यधारण गर्ने परामर्श दिन्छन् तथा एक अर्कालाई दया गर्ने परामर्श दिन्छन् ।

اُولٰٓئِكَ اَصْحٰبُ الْمَيْمَنَةِ ﴿١٨﴾

१९. तिनीहरू नै दाहिने हाततर्फका मानिसहरू हुन् ।

وَالَّذِيْنَ كَفَرُوْا بِاٰيٰتِنَا هُمْ اَصْحٰبُ الْمَشْئَمَةِ ﴿١٩﴾

२०. परन्तु जसले हाम्रा निर्देशनहरूप्रति अविश्वास गर्छन्, तिनीहरू देब्रे हाततर्फका मानिसहरू हुन् ।

عَلَيْهِمْ نَارٌ مُّؤْصَدَةٌ ﴿٢٠﴾

२१. तिनीहरूलाई माथिबाट अग्निले (चौतर्फी) घेर्नेछ ।

سُوْرَةُ الشَّمْسِ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ سِتَّ عَشْرَةَ اٰيَةً

## अल्-शम्स
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

وَالشَّمْسِ وَضُحٰىهَا ②

२. सूर्य तथा त्यसको प्रकाश फैलिन लागेको समयको शपथ,

وَالْقَمَرِ اِذَا تَلٰىهَا ③

३. तथा चन्द्रमाको (शपथ), जब त्यसले उसको (सूर्यको) अनुसरण गर्छ,

وَالنَّهَارِ اِذَا جَلّٰىهَا ④

४. तथा दिवाको (शपथ), जब त्यसले उसको गौरव प्रकट गर्छ,

وَالَّيْلِ اِذَا يَغْشٰىهَا ⑤

५. तथा रात्रिको (शपथ), जब त्यसले उसमाथि एउटा पर्दा तानिदिन्छ,

وَالسَّمَآءِ وَمَا بَنٰىهَا ⑥

६. तथा आकाश र त्यसको बनावटको (शपथ);

وَالْاَرْضِ وَمَا طَحٰىهَا ⑦

७. तथा पृथ्वी र त्यसको फैलावटको (शपथ);

وَنَفْسٍ وَّمَا سَوّٰىهَا ⑧

८. तथा आत्मा र त्यसको पूर्णताको (शपथ);

فَاَلْهَمَهَا فُجُوْرَهَا وَتَقْوٰىهَا ⑨

९. तथा उनले त्यसका निम्ति के अनुचित छ र त्यसका निम्ति के उचित छ भन्ने कुरा त्यसप्रति राम्ररी प्रकट गरिदिएका छन्–

قَدْ اَفْلَحَ مَنْ زَكّٰىهَا ⑩

१०. जसले त्यसलाई वृद्धि गर्छ त्यो व्यक्ति निस्सन्देह कृतार्थ हुन्छ,

| | |
|---|---|
| ११. तथा जसले त्यसलाई भ्रष्ट तुल्याउँछ त्यो व्यक्ति नाश हुन पुग्छ । | وَقَدْ خَابَ مَنْ دَسّٰهَا ﴿١١﴾ |
| १२. समूद (जाति)ले आफ्नो विद्रोह(पूर्ण आचरण)कै कारण (सत्यलाई) अस्वीकार गरे | كَذَّبَتْ ثَمُوْدُ بِطَغْوٰىهَآ ﴿١٢﴾ |
| १३. जब तिनीहरूमध्येको सर्वाधिक अभागी व्यक्ति खडा भयो, | اِذِ انْبَعَثَ اَشْقٰىهَا ﴿١٣﴾ |
| १४. तब अल्लाहका सन्देशवाहकले भने, "अल्लाहकी ऊँटनीलाई (एक्लै छाडिदेऊ) र त्यसलाई पानी पिउन (देऊ) ।" | فَقَالَ لَهُمْ رَسُوْلُ اللّٰهِ نَاقَةَ اللّٰهِ وَسُقْيٰهَا ﴿١٤﴾ |
| १५. परन्तु तिनीहरूले उनलाई अस्वीकार गरे, र त्यसका घुँडा पछिका नाडीहरू काटे , अतः तिनीहरूको पापकै कारण तिनीहरूका प्रतिपालकले तिनीहरूलाई पूर्णरूपमा ध्वस्त पारे, र तिनीहरूलाई (माटोमा) मिलाएरै छाडे । | فَكَذَّبُوْهُ فَعَقَرُوْهَا ۙ۬ فَدَمْدَمَ عَلَيْهِمْ رَبُّهُمْ بِذَنْۢبِهِمْ فَسَوّٰىهَا ﴿١٥﴾ |
| १६. तथा उनले तिनीहरूको परिणामको कुनै पर्वाह गरेनन् । | وَلَا يَخَافُ عُقْبٰهَا ﴿١٦﴾ |

سُوْرَةُ الَّيْلِ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ اثْنَتَانِ وَعِشْرُوْنَ اٰيَةً

## अल्-लैल
(हिजरतअघि अवतरित)

| | |
|---|---|
| १. परम कृपालु, परम दयालु, अल्लाहको नाममा । | بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ① |
| २. रात्रिको शपथ जब त्यसले ढाक्छ ! | وَالَّيْلِ اِذَا يَغْشٰى ② |
| ३. तथा दिवाको (शपथ), जब त्यो प्रकाशमय हुन्छ, | وَالنَّهَارِ اِذَا تَجَلّٰى ③ |
| ४. तथा पुरुष र स्त्री जातिको सृष्टिको (शपथ), | وَمَا خَلَقَ الذَّكَرَ وَالْاُنْثٰٓى ④ |
| ५. निश्चय नै तिमीहरूका प्रयासहरू भिन्न भिन्न रहेका छन् । | اِنَّ سَعْيَكُمْ لَشَتّٰى ⑤ |
| ६. अत: जसले दिन्छ र धर्मनिष्ठ बन्छ, | فَاَمَّا مَنْ اَعْطٰى وَاتَّقٰى ⑥ |
| ७. तथा जसले सम्पूर्ण उत्तम कुराहरूको समर्थन गर्छ, | وَصَدَّقَ بِالْحُسْنٰى ⑦ |
| ८. त्यस व्यक्तिका निम्ति भने (हरेक) शुभ अवसरलाई हामी सरल तुल्याउनेछौं । | فَسَنُيَسِّرُهٗ لِلْيُسْرٰى ⑧ |
| ९. परन्तु जसले कन्जुसी गर्छ र (अहङ्कारपूर्वक) लापर्वाही अवलम्बन गर्छ, | وَاَمَّا مَنْۢ بَخِلَ وَاسْتَغْنٰى ⑨ |
| १०. तथा सत्यलाई अस्वीकार गर्छ, | وَكَذَّبَ بِالْحُسْنٰى ⑩ |
| ११. त्यसका निम्ति भने हामी विनाशको मार्ग सुगम तुल्याउनेछौं । | فَسَنُيَسِّرُهٗ لِلْعُسْرٰى ⑪ |
| १२. जब त्यो व्यक्ति बरबाद हुनेछ त्यसको सम्पत्तिले त्यसलाई केही लाभ पुऱ्याउने छैन । | وَمَا يُغْنِيْ عَنْهُ مَالُهٗٓ اِذَا تَرَدّٰى ⑫ |

إِنَّ عَلَيْنَا لَلْهُدَىٰ ⑫

१३. सन्मार्ग प्रदर्शन गर्नु निश्चयपूर्वक हाम्रै जिम्मेवारी रहेको छ,

وَإِنَّ لَنَا لَلْآخِرَةَ وَالْأُولَىٰ ⑬

१४. तथा परलोकका साथै वर्तमान जीवनमाथि पनि हाम्रै अधिकार रहेको छ ।

فَأَنذَرْتُكُمْ نَارًا تَلَظَّىٰ ⑭

१५. अतः म तिमीहरूलाई एउटा प्रज्वलित अग्निबाट सावधान गर्छु ।

لَا يَصْلَاهَا إِلَّا الْأَشْقَى ⑮

१६. त्यसमा केवल त्यो महादुष्ट व्यक्तिबाहेक अन्य कोही प्रवेश गर्नेछैन,

الَّذِي كَذَّبَ وَتَوَلَّىٰ ⑯

१७. जसले (सत्यलाई) अस्वीकार गर्छ र (आफ्नो) पिठ्यूँ फेर्छ ।

وَسَيُجَنَّبُهَا الْأَتْقَى ⑰

१८. परन्तु त्यस धर्मनिष्ठ व्यक्तिलाई भने त्यसबाट टाढा राखिनेछ,

الَّذِي يُؤْتِي مَالَهُ يَتَزَكَّىٰ ⑱

१९. जसले पवित्रता प्राप्तिका निम्ति आफ्नो सम्पत्ति दान गर्छ ।

وَمَا لِأَحَدٍ عِندَهُ مِن نِّعْمَةٍ تُجْزَىٰ ⑲

२०. तथा त्यो व्यक्ति कसैको उपकारको ऋणि हुँदैन जसको बदला उसले चुकाउनु पर्ने होस्,

إِلَّا ابْتِغَاءَ وَجْهِ رَبِّهِ الْأَعْلَىٰ ⑳

२१. परन्तु (उसले आफ्नो सम्पत्ति केवल) आफ्ना परम महिमामय, प्रतिपालकको प्रसन्नता प्राप्तिका निम्ति (दान गर्छ) ।

وَلَسَوْفَ يَرْضَىٰ ㉑

२२. तथा शीघ्र नै उनी (अल्लाह उसप्रति) पूर्ण प्रसन्न हुनेछन् ।

سُورَةُ الضُّحَىٰ مَكِّيَّةٌ وَهِيَ مَعَ الْبَسْمَلَةِ اثْنَتَا عَشْرَةَ آيَةً

## अल्-जुहा
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

وَالضُّحٰى ②

२. पूर्वाह्वानको बढ्दो प्रकाशको शपथ,

وَالَّيْلِ اِذَا سَجٰى ③

३. तथा रात्रिको (शपथ), जब त्यसको (अन्धकार) फैलिन्छ,

مَا وَدَّعَكَ رَبُّكَ وَمَا قَلٰى ④

४. तिम्रा प्रतिपालकले न तिमीलाई त्यागेका छन्, न त उनी (तिमीप्रति) अप्रसन्न भएका छन् ।

وَلَلْاٰخِرَةُ خَيْرٌ لَّكَ مِنَ الْاُوْلٰى ⑤

५. निश्चय नै (प्रत्येक) आउँदो -घडी) तिम्रा निम्ति बितेको घडीभन्दा अधिक उत्तम रहेको छ ।

وَلَسَوْفَ يُعْطِيْكَ رَبُّكَ فَتَرْضٰى ⑥

६. तथा शीघ्र नै तिम्रा प्रतिपालकले तिमीलाई त्यो कुरो प्रदान गर्नेछन् जसबाट तिमी अति प्रसन्न हुनेछौ ।

اَلَمْ يَجِدْكَ يَتِيْمًا فَاٰوٰى ⑦

७. के तिमीलाई उनले टुहुरो(रूपमा) पाएर आश्रय दिएनन् र?

وَوَجَدَكَ ضَآلًّا فَهَدٰى ⑧

८. तथा उनले तिमीलाई (उनको) खोजमा फिर्दै गरेको पाएर (आफूतर्फ आंउने) मार्ग देखाए ।

وَوَجَدَكَ عَآئِلًا فَاَغْنٰى ⑨

९. तथा तिमीलाई अभावग्रस्त पाएर उनले
(तिमिलाई) धनसम्पन्न बनाए ।

فَاَمَّا الْيَتِيْمَ فَلَا تَقْهَرْ ⑩

१०. अतः टुहुरामाथि उत्पीडन नगर,

وَاَمَّا السَّآئِلَ فَلَا تَنْهَرْ ⑪

११. तथा जहाँसम्म भिखारीको सम्बन्ध छ,

त्यसलाई नधुत्कार,

وَاَمَّا بِنِعْمَةِ رَبِّكَ فَحَدِّثْ ۝١١

१२. तथा आफ्ना प्रतिपालकको अनुग्रह दान) बारे (अन्य व्यक्तिहरूसित) चर्चा गर




## अल्-इन्शिराह
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ۝١

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

اَلَمْ نَشْرَحْ لَكَ صَدْرَكَ ۝٢

२. के हामीले तिम्रा निम्ति तिम्रो छाती खोलिदिएका छैनौं र,

وَوَضَعْنَا عَنْكَ وِزْرَكَ ۝٣

३. तथा तिमीबाट तिम्रो त्यो बोझ उतारेर फ्याँकि दियौं

الَّذِيْٓ اَنْقَضَ ظَهْرَكَ ۝٤

४. जसले तिम्रो पिठ्यूँ तोड्नै लागेको थियो,

وَرَفَعْنَا لَكَ ذِكْرَكَ ۝٥

५. तथा तिम्रो नामलाई प्रसिद्धि प्रदान गऱ्यौ?

فَاِنَّ مَعَ الْعُسْرِ يُسْرًا ۝٦

६. निश्चय नै कठिनाइपछि सहुलियत (पूर्ण अवसर) आएरै छाड्नेछ ।

اِنَّ مَعَ الْعُسْرِ يُسْرًا ۝٧

७. सुन ! कठिनाईपछि सहुलियत निश्चित छ ।

فَاِذَا فَرَغْتَ فَانْصَبْ ۝٨

८. अतः जब तिमी कार्यमुक्त हुन्छौ, (पुनः) प्रचेष्टा गर,

وَاِلٰى رَبِّكَ فَارْغَبْ ۝٩

९. तथा तिमी पूर्ण उत्साहका साथ आफ्ना प्रतिपालकतर्फ उनकै चाहनामा झुक्ने गर ।

سُوْرَةُ التِّيْنِ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ تِسْعُ اٰيَاتٍ

## अल्-तीन
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

وَالتِّيْنِ وَالزَّيْتُوْنِ ②

२. अन्जीर र जैतुनको शपथ,

وَطُوْرِ سِيْنِيْنَ ③

३. तथा सिनाइ पर्वतको (शपथ),

وَهٰذَا الْبَلَدِ الْاَمِيْنِ ④

४. तथा यस शान्तिपूर्ण नगरको शपथ,

لَقَدْ خَلَقْنَا الْاِنْسَانَ فِيْٓ اَحْسَنِ تَقْوِيْمٍ ⑤

५. निश्चय नै, मानिसलाई हामीले सृष्टिको अत्युत्तम पद्धतिअन्तर्गत सृष्टि गरेका छौं;

ثُمَّ رَدَدْنٰهُ اَسْفَلَ سٰفِلِيْنَ ⑥

६. त्यसपछि त्यसलाई हामीले सबैभन्दा निकृष्ट(अवस्था)तर्फ फर्कायौं;

اِلَّا الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ فَلَهُمْ اَجْرٌ غَيْرُ مَمْنُوْنٍ ⑦

७. सिवाय ती व्यक्तिहरू(बाहेक), जसले विश्वास गर्छन् र पुण्य कार्य गर्छन्; अतः तिनीहरूका निम्ति भने अपार प्रतिदान रहेको छ ।

فَمَا يُكَذِّبُكَ بَعْدُ بِالدِّيْنِ ⑧

८. अतः निर्णयका सम्बन्धमा त्यसपछि कुन कुराले तँलाई अस्वीकार गर्न बाध्य गर्छ त?

اَلَيْسَ اللّٰهُ بِاَحْكَمِ الْحٰكِمِيْنَ ⑨ ع

९. के अल्लाह नै सर्वश्रेष्ठ निर्णायक होइनन् र?

سُوْرَةُ الْعَلَقِ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ عِشْرُوْنَ اٰيَةً

अल्-'अलक
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

اِقْرَاْ بِاسْمِ رَبِّكَ الَّذِيْ خَلَقَ ①

२. आफ्ना ती प्रतिपालकको नाममा पढ जसले सृष्टि गरे,

خَلَقَ الْاِنْسَانَ مِنْ عَلَقٍ ②

३. मानिसलाई उनले एउटा टाँसिने पिण्डबाट सृष्टि गरे ।

اِقْرَاْ وَرَبُّكَ الْاَكْرَمُ ③

४. तिमी पढ ! तथा तिम्रा ती प्रतिपालक परम प्रतिष्ठावान रहेका छन्,

الَّذِيْ عَلَّمَ بِالْقَلَمِ ④

५. जसले कलमद्वारा (ज्ञान) सिकाए,

عَلَّمَ الْاِنْسَانَ مَا لَمْ يَعْلَمْ ⑤

६. उनले मानिसलाई त्यो (कुरो) सिकाए जसको उसलाई ज्ञान थिएन ।

كَلَّآ اِنَّ الْاِنْسَانَ لَيَطْغٰٓى ⑥

७. होइन ! (अपितु) मानिस निस्सन्देह सीमोल्लङ्घन गरिरहेछ,

اَنْ رَّاٰهُ اسْتَغْنٰى ⑦

८. किनभने उ स्वयम्लाई (पूर्णरूपमा) स्वाधीन ठान्छ ।

اِنَّ اِلٰى رَبِّكَ الرُّجْعٰى ⑧

९. निस्सन्देह तिम्रा प्रतिपालकतर्फै फर्केर जानु छ ।

اَرَءَيْتَ الَّذِيْ يَنْهٰى ⑨

१०. के तिमीले त्यस बाधा उत्पन्न गर्ने व्यक्तिलाई देखेका छौ

عَبْدًا اِذَا صَلّٰى ⑩

११. जसले (हाम्रो) एउटा सेवकलाई उसले नमाज अनुष्ठान गर्दा (बाधा पुऱ्याउँछ)?

اَرَءَيْتَ اِنْ كَانَ عَلَى الْهُدٰٓى ⑪

१२. (सावधान) के यदि त्यो (हाम्रो सेवक) सन्मार्गमा रहेको भए तापनि,

أَوْ أَمَرَ بِالتَّقْوٰى ﴿١٣﴾

१३. अथवा धर्मनिष्ठताको आदेश दिने व्यक्ति भए तापनि?

أَرَءَيْتَ إِنْ كَذَّبَ وَتَوَلّٰى ﴿١٤﴾

१४. पुन: के तिमीले ध्यान दिएका छौ यदि त्यो सत्यको अस्वीकारी र (साथै) पिठ्यूँ फेर्ने व्यक्ति भएमा,

أَلَمْ يَعْلَمْ بِأَنَّ اللّٰهَ يَرٰى ﴿١٥﴾

१५. अल्लाहले देखिरहेछन् भन्ने कुरा त्यसले बुझेको छैन र?

كَلَّا لَئِنْ لَّمْ يَنْتَهِ ۙ لَنَسْفَعًۢا بِالنَّاصِيَةِ ﴿١٦﴾

१६. होइन, यदि त्यो व्यक्ति विरत रहेन (पछि हटेन) भने, हामी अवश्य त्यसलाई जुल्फीमा समातेर घिस्स्याउँनेछौं,

نَاصِيَةٍ كَاذِبَةٍ خَاطِئَةٍ ﴿١٧﴾

१७. मिथ्या र पापमा लिप्त जुल्फी(मा)।

فَلْيَدْعُ نَادِيَهٗ ﴿١٨﴾

१८. अत: त्यसले आफ्ना सहयोगीहरूलाई बोलाओस्,

سَنَدْعُ الزَّبَانِيَةَ ﴿١٩﴾

१९. हामी (पनि आफ्ना दण्डदिने) फरिस्ताहरूलाई बोलाउने छौं (जसले त्यसलाई नर्कमा हाल्नेछन्)।

كَلَّا ۗ لَا تُطِعْهُ وَاسْجُدْ وَاقْتَرِبْ ﴿٢٠﴾ ۩

२०. होइन, तिमी त्यसव्यक्तितर्फ नझुक, अपितु तिमी साष्टाङ्ग प्रणाम गर्ने गर, र (अल्लाहतर्फ) क्रमश:अघि बढ।




## अल्-क़द्र

(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा।

إِنَّآ أَنْزَلْنٰهُ فِيْ لَيْلَةِ الْقَدْرِ ②

२. निश्चय नै, यसलाई हामीले भाग्य वान रात्रिमा अवतीर्ण गऱ्यौं।

وَمَآ أَدْرٰىكَ مَا لَيْلَةُ الْقَدْرِ ③

३. तथा भाग्यवान रात्रि के हो भनेर तिमीलाई कसले अवगत गराएको छ?

لَيْلَةُ الْقَدْرِ ۙ خَيْرٌ مِّنْ أَلْفِ شَهْرٍ ④

४. त्यो भाग्यवान रात्रि ता हजार महिनाभन्दा पनि उत्तम रहेको छ।

تَنَزَّلُ الْمَلٰٓئِكَةُ وَالرُّوْحُ فِيْهَا بِإِذْنِ رَبِّهِمْ ۚ مِنْ كُلِّ أَمْرٍ ⑤

५. त्यसमा फरिस्ताहरू र (पवित्र) आत्मा सम्पूर्ण मामिलाहरूका बारेमा आफ्ना प्रतिपालकको आदेश लिएर अवतीर्ण हुन्छन्–

سَلٰمٌ ۛ هِيَ حَتّٰى مَطْلَعِ الْفَجْرِ ⑥

६. शान्ति-बिहानी उदय हुन्जेलसम्म शान्ति नै शान्ति रहनेछ)।






## अल्-बाय्यिना:

(हिजरतपछि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा

لَمْ يَكُنِ الَّذِيْنَ كَفَرُوْا مِنْ أَهْلِ الْكِتٰبِ وَالْمُشْرِكِيْنَ مُنْفَكِّيْنَ حَتّٰى تَأْتِيَهُمُ الْبَيِّنَةُ ②

२. पुस्तकप्राप्त व्यक्तिहरूमध्ये र मूर्तिपूजकहरूमध्ये जसले अविश्वास गरेका छन्, तिनीहरूसमक्ष स्पष्ट दलिल नआउन्जेलसम्म तिनीहरू (अविश्वास गर्नबाट) पछि हट्ने थिएनन्–

رَسُوْلٌ مِّنَ اللّٰهِ يَتْلُوْا صُحُفًا مُّطَهَّرَةً ۝٢

३. (अर्थात्), अल्लाहकातर्फबाट एकजना यस्ता सन्देशवाहक (जसले) पवित्र तुल्याइएको ग्रन्थ पढेर सुनाउँछन् ।

فِيْهَا كُتُبٌ قَيِّمَةٌ ۝٣

४. त्यसमा सदा रहने शिक्षाहरू छन् ।

وَمَا تَفَرَّقَ الَّذِيْنَ اُوْتُوا الْكِتٰبَ اِلَّا مِنْۢ بَعْدِ مَا جَآءَتْهُمُ الْبَيِّنَةُ ۝٤

५. तथा जसलाई पुस्तक प्रदान गरिएको थियो, तिनीहरू तब मात्र विभिन्न समूहमा विभाजित भए जब तिनीहरूसमक्ष स्पष्ट दलिल आयो ।

وَمَآ اُمِرُوْٓا اِلَّا لِيَعْبُدُوا اللّٰهَ مُخْلِصِيْنَ لَهُ الدِّيْنَ ۙ حُنَفَآءَ وَ يُقِيْمُوا الصَّلٰوةَ وَ يُؤْتُوا الزَّكٰوةَ وَذٰلِكَ دِيْنُ الْقَيِّمَةِ ۝٥

६. तथा तिनीहरूलाई केवल साँच्चा आज्ञाकारी
(र) एकनिष्ट बनी अल्लाहको उपासना गर्ने र नमाज अनुष्ठानं गर्ने र जगात दिने आदेश दिइएको थियो । तथा सन्मार्गमा (हिँड्ने मानिसहरूको) यही नै धर्म रहेको छ

اِنَّ الَّذِيْنَ كَفَرُوْا مِنْ اَهْلِ الْكِتٰبِ وَ الْمُشْرِكِيْنَ فِيْ نَارِ جَهَنَّمَ خٰلِدِيْنَ فِيْهَا ؕ اُولٰٓئِكَ هُمْ شَرُّ الْبَرِيَّةِ ۝٦

७. वस्तुत: पुस्तकप्राप्त व्यक्तिहरूमध्ये र मूर्तिपूजकहरूमध्येका अविश्वासी व्यक्तिहरू नर्कको अग्निमा दाखिल हुनेछन्, र त्यहीँ तिनीहरू (सदा) रहनेछन् । तिनीहरू नै सबैभन्दा निकृष्ट प्राणीहरू रहेका छन् ।

اِنَّ الَّذِيْنَ اٰمَنُوْا وَ عَمِلُوا الصّٰلِحٰتِ ۙ اُولٰٓئِكَ هُمْ خَيْرُ الْبَرِيَّةِ ۝٧

८. वस्तुत:, जसले विश्वास गर्छन् र पुण्यकार्य गर्छन्– तिनीहरू नै सर्वोत्तम प्राणीहरू रहेका छन् ।

جَزَآؤُهُمْ عِنْدَ رَبِّهِمْ جَنّٰتُ عَدْنٍ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ خٰلِدِيْنَ فِيْهَآ اَبَدًا ؕ رَضِيَ اللّٰهُ عَنْهُمْ وَ رَضُوْا عَنْهُ ؕ ذٰلِكَ لِمَنْ خَشِيَ رَبَّهٗ ۝٨

९. तिनीहरूको प्रतिदान तिनीहरूका प्रतिपालकका जुनाफमा छ– (अर्थात्) यस्ता सदा रहने बगैँचाहरू जसमनि नहरहरू बग्ने गर्छन्; तिनीहरू त्यहाँ सदा निवास गर्नेछन् । अल्लाह तिनीहरूसित पूर्ण सन्तुष्ट भएका छन्, र तिनीहरू अल्लाहसित पूर्ण सन्तुष्ट भएका छन् । जो व्यक्ति आफ्ना प्रतिपालकसित डराउने गर्छ यो त्यसैका निम्ति रहेको छ ।

سُوْرَةُ الزِّلْزَالِ مَدَنِيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ تِسْعُ اٰيَاتٍ

## अल्-ज़िल्ज़ाल
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

اِذَا زُلْزِلَتِ الْاَرْضُ زِلْزَالَهَا ①

२. जब पृथ्वीलाई पूर्णरूपमा हल्लाइनेछ,

وَاَخْرَجَتِ الْاَرْضُ اَثْقَالَهَا ②

३. तथा पृथ्वीले आफ्नो बोझ -बाहिर) निकालेर फ्याँक्नेछ,

وَقَالَ الْاِنْسَانُ مَا لَهَا ③

४. तथा मानिसले भन्नेछ, "यसलाई के भयो?"

يَوْمَئِذٍ تُحَدِّثُ اَخْبَارَهَا ④

५. त्यसदिन त्यसले (पृथ्वीले) आफ्नो खबर वर्णन गर्नेछ,

بِاَنَّ رَبَّكَ اَوْحٰى لَهَا ⑤

६. त्यसो किन हुनेछ भने, तिम्रा प्रतिपालकले त्यसप्रति त्यही (गर्न) आकाशवाणी गरेका छन् ।

يَوْمَئِذٍ يَّصْدُرُ النَّاسُ اَشْتَاتًا ۙ لِّيُرَوْا اَعْمَالَهُمْ ⑥

७. त्यसदिन मानिसहरू विभिन्न समूहका रूपमा एकत्रित हुन आउँनेछन्, ताकि तिनीहरूले आफ्ना (कार्यहरूको परिणाम) देख्न सकून् ।

فَمَنْ يَّعْمَلْ مِثْقَالَ ذَرَّةٍ خَيْرًا يَّرَهٗ ⑦

८. तब जसले एउटा कण बराबर पुण्य गरेको छ उसले त्यसलाई देख्नेछ,

وَمَنْ يَّعْمَلْ مِثْقَالَ ذَرَّةٍ شَرًّا يَّرَهٗ ⑧

९. तथा जसले एउटा कण बराबर दुष्कर्म गरेको छ उसले (पनि) त्यसलाई देख्नेछ ।

سُوْرَةُ الْعٰدِيٰتِ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ اِثْنَتَا عَشْرَةَ اٰيَةً

## अल्-'आदियात
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

وَالْعٰدِيٰتِ ضَبْحًا ①

२. (युद्धश्वहरूको) नाकले फुँ फुँ गर्ने (घोडाहरूको) शपथ,

فَالْمُوْرِيٰتِ قَدْحًا ②

३. (जसका) टापले अग्निका झिल्काहरू निस्कन्छन्,

فَالْمُغِيْرٰتِ صُبْحًا ③

४. तथा बिहानिपख आक्रमणको तयारी गर्ने(हरूको),

فَاَثَرْنَ بِهٖ نَقْعًا ④

५. र त्यसको फलस्वरूप जसले धुलोको बादल उडाउने गर्छन्,

فَوَسَطْنَ بِهٖ جَمْعًا ⑤

६. तथा त्यसैद्वारा (तिनीहरू शत्रुका) पङ्क्तिहरूका बीचमा प्रवेश गर्छन्

اِنَّ الْاِنْسَانَ لِرَبِّهٖ لَكَنُوْدٌ ⑥

७. निश्चय नै, मानिस आफ्ना प्रतिपालकप्रति अकृतज्ञ रहेको छ;

وَاِنَّهٗ عَلٰى ذٰلِكَ لَشَهِيْدٌ ⑦

८. तथा निश्चय नै त्यस कुराप्रति त्यो (स्वयम्) साक्षी रहेको छ;

وَاِنَّهٗ لِحُبِّ الْخَيْرِ لَشَدِيْدٌ ⑧

९. तथा सम्पत्तिको मोहमा त्यो निश्चय नै अत्यन्त लिप्त रहेको छ ।

اَفَلَا يَعْلَمُ اِذَا بُعْثِرَ مَا فِي الْقُبُوْرِ ⑨

१०. के यस्तो व्यक्तिले त्यस कुरालाई जान्दैन र जब चिहानमा रहेका व्यक्तिहरूलाई उठाएर खडा गरिनेछ,

وَحُصِّلَ مَا فِي الصُّدُوْرِ ⑩

११. तथा छातीभित्र रहेका कुराहरूलाई बाहिर निकालिनेछ?

اِنَّ رَبَّهُمْ بِهِمْ يَوْمَئِذٍ لَّخَبِيْرٌ ⑪

१२. त्यसदिन, तिनीहरूका प्रतिपालकले अवश्य तिनीहरूमाथि कडा दृष्टि राख्नेछन् ।




## अल्- क़ारि'अ:

(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

اَلْقَارِعَةُ ②

२. त्यो 'महाविपत्ति' ।

مَا الْقَارِعَةُ ③

३. त्यो महाविपत्ति के हो?

وَمَآ اَدْرٰىكَ مَا الْقَارِعَةُ ④

४. तथा त्यो महाविपत्ति के हो भनी तिमीलाई कसले अवगत गराएको छ?

يَوْمَ يَكُوْنُ النَّاسُ كَالْفَرَاشِ الْمَبْثُوْثِ ⑤

५. त्यसदिन मानिसहरू यता-उता छरिएका कीट पतङ्गसदृश हुनेछन्,

وَتَكُوْنُ الْجِبَالُ كَالْعِهْنِ الْمَنْفُوْشِ ⑥

६. तथा पर्वतहरू धुनेको रुईसदृश हुनेछन् ।

فَاَمَّا مَنْ ثَقُلَتْ مَوَازِيْنُهٗ ⑦

७. तब, जसको पल्ला भारी हुनेछ,

فَهُوَ فِيْ عِيْشَةٍ رَّاضِيَةٍ ⑧

८. त्यसलाई भने एउटा सुखमय जीवन प्राप्त हुनेछ ।

وَاَمَّا مَنْ خَفَّتْ مَوَازِيْنُهٗ ⑨

९. परन्तु जसको पल्ला हलुको हुनेछ,

فَاُمُّهٗ هَاوِيَةٌ ⑩

१०. 'हाविया:' त्यसकी आमा बन्नेछ,

وَمَآ اَدْرٰىكَ مَا هِيَهْ ⑪

११. तथा त्यो के (वस्तु) हो भनी तिमीलाई कसले अवगत गराएको छ?

نَارٌ حَامِيَةٌ ⑫

१२. (त्यो) एउटा ज्वलन्त अग्नि (हो) ।

سُوْرَةُ التَّكَاثُرِ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ تِسْعُ اٰيَاتٍ

## अल्-तकासुर
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

اَلْهٰىكُمُ التَّكَاثُرُ ②

२. धन सम्पत्ति एकत्रित गर्नका निम्ति परस्पर प्रतिस्पर्धा (गर्ने कार्य)ले तिमीहरूलाई भुल्याएको थियो

حَتّٰى زُرْتُمُ الْمَقَابِرَ ③

३. त्यही अवस्थामा, तिमीहरू चिहानमा पुग्यौ

كَلَّا سَوْفَ تَعْلَمُوْنَ ④

४. होइन ! (अपितु) तिमीहरूले शीघ्र नै जान्नेछौ ।

ثُمَّ كَلَّا سَوْفَ تَعْلَمُوْنَ ⑤

५. होइन, (अपितु) पुनः ! तिमीहरूले शीघ्र नै जान्नेछौ ।

كَلَّا لَوْ تَعْلَمُوْنَ عِلْمَ الْيَقِيْنِ ⑥

६. होइन ! (अपितु) यदि तिमीहरूलाई ठोस (निश्चित) ज्ञान प्राप्त रहेको भए,

لَتَرَوُنَّ الْجَحِيْمَ ⑦

७. तिमीहरूले अवश्य (यसै वर्तमान जीवनमा) नर्कलाई देख्नेछौ ।

ثُمَّ لَتَرَوُنَّهَا عَيْنَ الْيَقِيْنِ ⑧

८. सुन, त्यसपछि तिमीहरूले त्यसलाई अवश्य निश्चित्तात्मक नेत्रले देख्नेछौ ।

ثُمَّ لَتُسْـَٔلُنَّ يَوْمَئِذٍ عَنِ النَّعِيْمِ ⑨

९. तब, त्यसदिन तिमीहरूलाई (सांसारिक) वैभवका सम्बन्धमा सोधिनेछ (हिसाब लिइनेछ) ।

سُورَةُ الْعَصْرِ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ اَرْبَعُ اٰيَاتٍ

## अल्-अस्र
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

وَالْعَصْرِ ②

२. स्मरणीय युगको साक्षीको शपथ,

اِنَّ الْاِنْسَانَ لَفِيْ خُسْرٍ ③

३. मानिस निश्चय नै घाटाग्रस्त (अवस्थामा) छ,

اِلَّا الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ وَتَوَاصَوْا بِالْحَقِّ ۙ وَتَوَاصَوْا بِالصَّبْرِ ④

४. सिवाय ती व्यक्तिहरू, जसले विश्वास गर्छन् र पुण्यकार्य गर्छन् तथा परस्पर एक-अर्कालाई सत्य (स्वीकार्ने), तथा एक-अर्कालाई धैर्यधारण गर्ने परामर्श दिने गर्छन् ।

سُورَةُ الْهُمَزَةِ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ عَشْرُ اٰيَاتٍ

## अल्-हुमजा:
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

وَيْلٌ لِّكُلِّ هُمَزَةٍ لُّمَزَةِ ②

२. हरेक (यस्तो) चुकुलीखोर, मिथ्यावादी व्यक्तिको सर्वनाश होस्,

الَّذِيْ جَمَعَ مَالًا وَّعَدَّدَهٗ ③

३. जसले धन सम्पत्ति थुपार्छ, र बारम्बार त्यसको गणना गरिरहन्छ ।

يَحْسَبُ اَنَّ مَالَهٗٓ اَخْلَدَهٗ ④

४. उसको सम्पत्तिले उसलाई अमर तुल्याउनेछ भन्ने उसले धारणा राख्छ ।

كَلَّا لَيُنْۢبَذَنَّ فِى الْحُطَمَةِ ⑤

५. होइन ! -अपितु) त्यसलाई अवश्य 'अल्-हुतामा:' मा हालिनेछ ।

وَمَآ اَدْرٰىكَ مَا الْحُطَمَةُ ⑥

६. तथा त्यो 'हुतामा:' के हो भनी तिमीलाई कसले अवगत गराउछ?

نَارُ اللّٰهِ الْمُوْقَدَةُ ⑦

७. (त्यो) अल्लाहले जलाएको अग्नि (हो),

الَّتِيْ تَطَّلِعُ عَلَى الْاَفْـِٕدَةِ ⑧

८. जुन हृदयभित्र उर्लने छ ।

اِنَّهَا عَلَيْهِمْ مُّؤْصَدَةٌ ⑨

९. तिनीहरूमाथि त्यसलाई (चारैतर्फबाट) बन्द गरिदिइनेछ

فِيْ عَمَدٍ مُّمَدَّدَةٍ ⑩

१०. उँचा उँचा तुल्याइएका खाँबाहरू भित्र ।



## अल्-फील
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहक नाममा ।

اَلَمْ تَرَ كَيْفَ فَعَلَ رَبُّكَ بِاَصْحٰبِ الْفِيْلِ ①

२. के तिमीलाई तिम्रा प्रतिपालकले हात्ती*वालाहरूसित कस्तो व्यवहार गरेका थिए भन्ने कुरा थाहा छैन र?

اَلَمْ يَجْعَلْ كَيْدَهُمْ فِيْ تَضْلِيْلٍ ②

३. के उनले तिनीहरूको योजनालाई असफल तुल्याएनन् र?

وَّاَرْسَلَ عَلَيْهِمْ طَيْرًا اَبَابِيْلَ ③

४. तथा उनले तिनीहरूविरुद्ध पक्षीहरूका झुण्डहरू पठाए,

تَرْمِيْهِمْ بِحِجَارَةٍ مِّنْ سِجِّيْلٍ ④

५. (जसले) तिनीहरूको (कुहेको मासु) गिलो माटोले बनेका डल्लाहरूमा (ढुङ्गामा) हिर्काइ हिर्काई (खान्थे) ।

فَجَعَلَهُمْ كَعَصْفٍ مَّاْكُوْلٍ ⑤

६. तथा (यस प्रकार) उनले तिनीहरूलाई (किराले) खाइसकेको भुस-पराल सदृश बनाए ।

---

* अबराहा, अबिसिनियाको राजाको तर्फबाट यमनका लागि इसाई गवर्नर ।




## अल्-कुरैश
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

لِاِيْلٰفِ قُرَيْشٍ ②

२. कुरैशलाई परस्पर ऐक्यवद्ध गर्न,

اٖلٰفِهِمْ رِحْلَةَ الشِّتَآءِ وَالصَّيْفِ ③

३. (तथा) तिनीहरूको मेलमिलाप बढाउनका निम्ति (हामीले) सर्दी र गर्मीको व्यापारिक यात्राको (व्यवस्था मिलाएका छौं)–

فَلْيَعْبُدُوْا رَبَّ هٰذَا الْبَيْتِ ④

४. तिनीहरूले त्यस घरका प्रतिपालकको उपासना गरून्,

الَّذِيْٓ اَطْعَمَهُمْ مِّنْ جُوْعٍ ۙ وَّاٰمَنَهُمْ مِّنْ خَوْفٍ ⑤

५. जसले तिनीहरूलाई भोकग्रस्त (अवस्थामा) खाना ख्वाए तथा भयबाट शान्ति-सुरक्षा प्रदान गरे ।

भाग ३० अल्-माऊन १०७




## अल्-माऊन
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

اَرَءَيْتَ الَّذِيْ يُكَذِّبُ بِالدِّيْنِ ②

२. के तिमीले त्यस धर्मको अस्वीकारीलाई देखेका छौ?

فَذٰلِكَ الَّذِيْ يَدُعُّ الْيَتِيْمَ ③

३. अत: त्यही नै हो जसले टुहुरालाई धुत्कारने गर्छ,

وَلَا يَحُضُّ عَلٰى طَعَامِ الْمِسْكِيْنِ ۝

४. तथा गरीबलाई भोजन गराउनतर्फ (कसैलाई) प्रोत्साहित गर्दैन ।

فَوَيْلٌ لِّلْمُصَلِّيْنَ ۝

५. अतः ती नमाज अनुष्ठानकारीहरूमाथि धिक्कार छ,

الَّذِيْنَ هُمْ عَنْ صَلَاتِهِمْ سَاهُوْنَ ۝

६. किनभने तिनीहरू आफ्नो नमाजप्रति अन्यमनस्क रहन्छन् ।

الَّذِيْنَ هُمْ يُرَآءُوْنَ ۝

७. तिनीहरू नै हुन जसले (केवल) देखावटी गर्छन् ।

وَيَمْنَعُوْنَ الْمَاعُوْنَ ۝

८. तथा मानिसहरूलाई साधारण लाभहरूबाट पनि तिनीहरू वञ्चित राख्छन् ।

سُوْرَةُ الْكَوْثَرِ مَكِّيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ اَرْبَعُ اٰيَاتٍ

## अल्-कौसर
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ۝

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

اِنَّآ اَعْطَيْنٰكَ الْكَوْثَرَ ۝

२. हामीले निश्चयपूर्वक तिमीलाई (पुण्य कुराको) प्रचुरता प्रदान गरेका छौं ।

فَصَلِّ لِرَبِّكَ وَانْحَرْ ۝

३. अतः तिमी आफ्ना प्रतिपालकको उपासना गर, तथा बलिदान गर्ने गर,

اِنَّ شَانِئَكَ هُوَ الْاَبْتَرُ ۝

४. निश्चय नै, तिम्रो शत्रु नै वस्तुतः अपुत्र (सन्तानहीन) रहेको छ ।




## अल्-काफिरून्
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

قُلْ يٰۤاَيُّهَا الْكٰفِرُوْنَ ②

२. तिमी भन, "ए अविश्वासीहरू हो !

لَاۤ اَعْبُدُ مَا تَعْبُدُوْنَ ③

३. "म त्यसको उपासना गर्दिनँ जसको तिमीहरू उपासना गर्छौ,

وَلَاۤ اَنْتُمْ عٰبِدُوْنَ مَاۤ اَعْبُدُ ④

४. "न त तिमीहरू त्यसको उपासना गर्छौ जसको म गर्छु ।

وَلَاۤ اَنَا عَابِدٌ مَّا عَبَدْتُّمْ ⑤

५. "तथा म तिनीहरूको उपासना गर्नेछैन जसको तिमीहरू उपासना गर्छौ,

وَلَاۤ اَنْتُمْ عٰبِدُوْنَ مَاۤ اَعْبُدُ ⑥

६. "न त तिमीहरू त्यसको उपासना गर्नेछौ जसको म उपासना गर्छु ।

لَكُمْ دِيْنُكُمْ وَلِيَ دِيْنِ ⑦

७. "तिमीहरूको धर्म तिमीहरूका निम्ति रहेको छ, तथा मेरो धर्म मेरै निम्ति रहेको छ ।"

अल्-नस्र ११०    भाग ३०

سُوْرَةُ النَّصْرِ مَدَنِيَّةٌ وَّهِيَ مَعَ الْبَسْمَلَةِ اَرْبَعُ اٰيَاتٍ

## अल्-नस्र
(हिजरतपछि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

اِذَا جَآءَ نَصْرُ اللّٰهِ وَالْفَتْحُ ②

२. जब अल्लाहको सहयोग र विजय आउनेछ,

وَرَاَيْتَ النَّاسَ يَدْخُلُوْنَ فِيْ دِيْنِ اللّٰهِ اَفْوَاجًا ۝

३. तथा अल्लाहको धर्ममा मानिसहरूलाई विभिन्न दलको रूपमा प्रवेश गरेको तिमीले देख्नेछौ,

فَسَبِّحْ بِحَمْدِ رَبِّكَ وَاسْتَغْفِرْهُ ۚ اِنَّهٗ كَانَ تَوَّابًا ۝

४. अतः तिमी आफ्ना प्रतिपालकको महिमा उनको प्रशंसाका साथ वर्णन गर, तथा उनीसित क्षमायाचना गर । उनी निश्चय नै (कृपापूर्वक) बारम्बार दृष्टि राख्ने गर्छन् ।

سُوْرَةُ اللَّهَبِ مَكِّيَّةٌ وَهِيَ مَعَ الْبَسْمَلَةِ سِتُّ اٰيَاتٍ

## अल्-लहब

(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ۝

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

تَبَّتْ يَدَآ اَبِيْ لَهَبٍ وَّتَبَّ ۝

२. अबु लहब*का दुबै हात नष्ट भएका छन्, तथा त्यो (स्वयम् पनि) नष्ट भयो ।

مَآ اَغْنٰى عَنْهُ مَالُهٗ وَمَا كَسَبَ ۝

३. उसको सम्पत्ति र उसले कमाएका (वस्तु)हरूले उसलाई केही लाभ पुऱ्याउने छैनन् ।

سَيَصْلٰى نَارًا ذَاتَ لَهَبٍ ۝

४. शीघ्र नै त्यो एउटा प्रज्वलित अग्निमा दाखिल हुनेछ,

وَّامْرَاَتُهٗ ۚ حَمَّالَةَ الْحَطَبِ ۝

५. तथा त्यसकी त्यो दाउरा (इन्धन) बोकेर ल्याउने पत्नी (समेत) ।

فِيْ جِيْدِهَا حَبْلٌ مِّنْ مَّسَدٍ ۝

६. त्यसका गर्धनमा खजूरका रेसाको बाटिएको डोरी बाँधिनेछ ।

---

* अबु-लहब, (ज्वालाहरूको बाबु) एउटा क्रोधी र विद्रोह प्रकृतिको मानिस, तथा अन्य व्यक्तिहरूलाई उत्तेजित पार्ने मानिसप्रति प्रयोग हुन्छ ।




## अल्-इख्लास
(हिजरतअघि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

قُلْ هُوَ اللّٰهُ اَحَدٌ ②

२. तिमी भन, "अल्लाह उनै हुन्, जो एक (अद्वितीय) छन् ।

اَللّٰهُ الصَّمَدُ ③

३. "अल्लाह, पूर्ण आत्मनिर्भर तथा सबैका आश्रयदाता रहेका छन् ।

لَمْ يَلِدْ ۙ وَلَمْ يُوْلَدْ ④

४. उनले न कसैलाई जन्माएका छन्, न त उनी जन्माइएका हुन्,

وَلَمْ يَكُنْ لَّهٗ كُفُوًا اَحَدٌ ⑤

५. "तथा उनीसदृश अन्य कोही रहेको छैन ।"

भाग ३० अल्-फलक ११३




## अल्-फलक
(हिजरतपछि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपाल, परम दयालु, अल्लाहको नाममा ।

قُلْ اَعُوْذُ بِرَبِّ الْفَلَقِ ②

२. तिमी भन, "फुटाएर (सृष्टिको) सिर्जना गर्ने प्रतिपालकसित म शरण याचना गर्छु,

مِنْ شَرِّ مَا خَلَقَ ③

३. "उनले सृष्टि गरेका (वस्तु)हरूको दुष्टताबाट,

وَمِنْ شَرِّ غَاسِقٍ إِذَا وَقَبَ ③

४. "तथा अन्धकार तुल्याउनेको दुष्टताबाट, त्यो सबै दिशामा फैलिन्छ,

وَمِنْ شَرِّ النَّفّٰثٰتِ فِي الْعُقَدِ ④

५. "तथा ती गाँठा गाँठामा फुक्नेहरूको दुष्टताबाट, जब तिनीहरू (उनीहरूलाई तोड्नका निम्ति) फुक्ने गर्छन्,

وَمِنْ شَرِّ حَاسِدٍ إِذَا حَسَدَ ⑤

६. "तथा डाहा गर्नेको दुष्टताबाट, जब त्यो डाहा गर्ने गर्छ (उनको शरण चाहन्छु) ।"




## अल्-नास
(हिजरतपछि अवतरित)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ①

१. परम कृपालु, परम दयालु, अल्लाहको नाममा ।

قُلْ أَعُوْذُ بِرَبِّ النَّاسِ ②

२. तिमी भन, "म मानवजातिका प्रतिपालकसित शरण माग्छु,

مَلِكِ النَّاسِ ③

३. "मानवजातिका सम्राट,

إِلٰهِ النَّاسِ ④

४. "मानव जातिका उपास्य, (सित शरण चाहन्छु)

مِنْ شَرِّ الْوَسْوَاسِ الْخَنَّاسِ ⑤

५. "त्यस कानेखुसी (कु-परामर्श दिएर) गरेर पछि हट्नेको दुष्टताबाट,

الَّذِيْ يُوَسْوِسُ فِيْ صُدُوْرِ النَّاسِ ⑥

६. "जसले मानिसका हृदयमा कानेखुसी ( कु-परामर्श ) निक्षेप गर्ने गर्छ,

مِنَ الْجِنَّةِ وَالنَّاسِ ⑦

७. "चाहे त्यो जिन्नहरूमध्येको होस अथवा (साधारण ) मानिसहरूमध्येकै ।"

# دُعَاءُ خَتْمِ الْقُرْآنِ

## पवित्र कुरान समाप्तिको दुआ (प्रार्थना)

اَللّٰهُمَّ ارْحَمْنِىْ بِالْقُرْاٰنِ الْعَظِيْمِ وَاجْعَلْهُ لِىْٓ اِمَامًا وَّ نُوْرًا وَّ هُدًى وَّ رَحْمَةً اَللّٰهُمَّ ذَكِّرْنِىْ مِنْهُ مَا نَسِيْتُ وَ عَلِّمْنِىْ مِنْهُ مَا جَهِلْتُ وَارْزُقْنِىْ تِلَاوَتَهٗ اٰنَآءَ الَّيْلِ وَ اٰنَآءَ النَّهَارِ وَاجْعَلْهُ لِىْ حُجَّةً يَّا رَبَّ الْعٰلَمِيْنَ

हे मेरा अल्लाह ! यस महान कुरानको आशीर्वादद्वारा ममाथि दया गर ।

तथा यसलाई मेरा निम्ति पथप्रदर्शक, विशेष ज्योति, मार्गदर्शन तथा करुणा (को साधन) बनाउ ।

हे अल्लाह ! पवित्र कुरानबाट मैले बिर्सिएका कुराहरू पुनः मलाई स्मरण गराउ, तथा मैले नजानेका कुराहरू मलाई सिकाउ तथा दिन रात यसको तिलावत (पाठ) गर्ने मलाई सामर्थ्य (क्षमता) प्रदान गर ।

तथा हे सम्पूर्ण विश्व ब्रह्माण्डका स्वामी ! यस (पवित्र कुरान) लाई मेरो फाइदाका निम्ति साक्षीस्वरूप बनाउ ।

## केही अरबी शब्दहरूको व्याख्या:

अबु लहब् : उनको वास्तविक नाम अब्द अल-उज्जा थियो र उनी पवित्र नबी मुहम्मदका काका थिए ।

अल्-जुदी : ती पर्वतमध्ये एक जसले दक्षिणमा आर्मेनियालाई मेसोपोटामियाबाट छुट्याउँछ तथा आस्सिरियाको त्यो भाग पनि जहाँ कर्दहरूको बसोबास छ र जसको नामबाटै त्यस पहाडको नाम पनि 'कर्दू' वा 'गर्दू' रहेको थियो तर ग्रीकहरूले त्यसलाई 'गोर्दोई' भने । डुंगा ( ) को शेष भाग गोर्दोई पहाडीमा देखापऱ्यो र सम्राट हेराक्लिएसले थमानिन नगरबाट अल्-जूदी पहाडसम्म गएर डुंगा देखिएको स्थल देखेका थिए भनिन्छ । पहिले त्यस पहाडी क्षेत्रमा 'डुंगाको विहार' भनिने एक विहार पनि थियो ।

अल्लाह : परमेश्वरको प्रकृत नाम ।

अल्-सफा वल मरवा : मक्काको का'बा नजीकका दुई पहाडहरू जसलाई अरबेली इतिहास र इस्लाम परम्पराले हगर (हाज्रा) र इस्माइलको कथासित जोर्छन् । इब्राहिमले उनीहरूलाई यी पहाडनिरको निर्जनस्थलमा छोडिदिएका थिए । यी पहाड हगरको कठिन कार्यको प्रतीकको रूपमा छन् ।' तिनी यी दुई पहाडको बीच हुँदै इस्माइलको लागि पानीको खोजीमा सातपटक दगुरेकी थिइन्; तथा सातपटक यी पहाडको परिक्रमा गर्नु हज्को एक संस्कार मानिन्छ ।

अरफात : मक्का नजिकैको एक उपत्यका वा मैदानस्थललाई दिइएको नाम जहाँ हाजीहरू जू'ल हिज्जाको अन्तिम भाग वा नवौं दिन रोकिन्छन् । यो ठाउँ मक्काबाट नौ माइल टाढा छ र यस ठाउँमा हाजीहरू रोकिनु हज्को एक मुख्य संस्कार मानिन्छ ।

बदर् : अर्थात् 'पूर्ण चन्द्रमा' – यो मक्का र मदिनाको बीचको बाटामा पर्ने ठाउँको नाम हो । यहाँ नै मुस्लिमहरू र मक्काका कुरेशहरूका बीचमा पहिलो नियमित युद्ध भएको थियो जसमा कुरेशी शक्ति नराम्ररी डगमगाएको थियो ।

बहिरा : मूर्तिपूजक अरबहरूले पोथी उँटलाई दिएको नाम (कसैकसैको भनाइमा भेडी र बाखी पनि) जसलाई उनीहरूले कान चिरेर चर्न छोडिदिएका थिए । यो कुनै देवता शक्तिलाई चढाइएको हुनाले यसको दूध ग्राह्य थिएन, न ता यसको पिठ्यूँ नै ।

बा'ल : देवताको एउटा नाम, सम्भवतः सूर्यको ।

बेक्का : मक्का उपत्यकालाई दिइएको नाम । कसै कसैले यसलाई 'मीम' अक्षर 'बे' भएर 'मक्का' शब्दकै पर्यायवाची भएको हो भनी मान्छन् ।

जूल्-नून वा साहिब अल्-हूत : पैगम्बर योना (यूनुस) ।

| | |
|---|---|
| जूल् करनैन : | कुरानमा उल्लेखित यो शब्दले मेडो-फारसी साम्राज्यको संस्थापक राजा साइरस भन्ने बुझिन्छ जुन राज्यले डेनिएलले आफ्नो प्रसिद्ध सपनामा देखेको भेडाका दुइ सिङ्को प्रतिनिधित्व गर्थ्यो । |
| हज् : | का'बा को तीर्थयात्रा । |
| हाम वा हा'मे : | अरबहरूले चढ्न र भारी बोकाउन नहुने भनी छुट्याइएको ऊँट । पोथी उँटलाई न चढ्न सकिन्थ्यो न केश कतर्न, तथा न चरन र पानीबाट रोक्न नै सकिन्थ्यो । |
| हुनैन : | हिजरी सम्बत् ८ मा भएको पवित्र नबी मुहम्मद र अरबका मूर्ति पूजक जातिहरूका बीचमा भएको लडाइँको एक महत्वपूर्ण दृश्य । यो ठाउँ मक्काबाट १५ माइल टाढा दक्षिणपूर्वमा अवस्थित छ । |
| इब्लिस : | अति थोरै भलाइ र धेरै खराबी भएको एक प्राणी जसले अल्लाहको दया आफ्नै अवज्ञाकारिताको कारणले गुमायो र आश्चर्यचकित एवम् संदिग्ध अवस्थामा रहन पुग्यो । 'इब्लिस' शब्दले खराबतत्वको प्रतिनिधित्व गर्छ जो भलाइको शक्ति भन्दा पृथक हुन्छ । |
| इद्रिस : | बाइबिलको इनोक । |
| जालूत : | बाइबिलमा यसको समानान्तर नाम छ- गोलियेथ; ( १ सामः १७:४), जसको अर्थ हुन्छ 'नेता वा अदृश्य आत्माहरूलाई नाश गर्नु, दगुर्नु वा ध्वंश पार्नु वा एक राक्षस । |
| जिन्न : | कुरानामा यस शब्दका निम्न अर्थ छन्:<br>(क) मानिसको मनमा खराव विचार उत्पन्न गर्ने प्रेत शक्तिहरू ।<br>यी सैतानका दूतहरू हुन् ।<br>(ख) अविश्वासीहरूले पूजा गर्ने गरेका काल्पनिक प्राणीहरू जसको संसारमा कतै अस्तित्व छैन,<br>(ग) यूरोपको उत्तरी पहाडी भागका निवासीहरू, जो राता र सेता रङ्गका छन्, जसलाई मानिसहरू अन्य मानवभन्दा फरक ठान्छन्, र जो एसियाका सभ्य मानिसहरूभन्दा अलग भएर बसे तर जो पछिका दिनहरूमा भौतिक विकास गर्न भने सक्षम भए तर धर्मको भने विरोध गर्थे<br>(घ) अपरिचित धर्म र राष्ट्रियता भएका मानिसहरू, र<br>(ङ) प्रागऐतिहासिक युगका ती असभ्य, जंगली प्राणी, जो मानवको आगमनभन्दा पहिल्यै वा मानवले पर्याप्त नैतिकता विकास गर्ने नियम कानुन अवतरित हुनुभन्दा पहिल्यै आएका थिए र गुफा तथा जमीनका खाल्डाभित्र बस्थे एवम् जसमाथि आचरणको विधिविधान लागू हुदैन थियो । |
| का'बा : | मक्काको त्यो पवित्र गृह जसतर्फ मुसलमानहरू नमाजको समयमा आफनो मुख गर्ने गर्छन् । |

| | |
|---|---|
| मन्न : | यस शब्दको मूल अर्थ हुन्छ -<br>(क) अनुकम्पा, (ख) परिश्रम वा दु:ख नगरी प्राप्त वस्तु, (ग) महको थोपा । |
| मश्अर अल्-हराम: | मुज्दलिफको एउटा सानो पहाडको नाम, जुन पहाड मक्का र 'अराफात' बीचमा छ । यो मक्काबाट प्राय छ माइल टाढा पर्छ । यहाँ हाजीहरू अराफातबाट फिरेपछि एक रात बास बस्छन्, त्यो रात हज्को महिनाको नवौं दिनमा पर्छ । |
| किब्ला : | नमाज पढदा फर्किइने दिशा, यसले मक्काको का'बा भन्ने नै बुझाउँछ । |
| कुरैश : | मक्काको एक प्रसिद्ध जाति । जससित पवित्र नबी ( मुहम्मद ) सम्बधित थिए । |
| रा'इना : | यस शब्दको अर्थ हुन्छ- 'हामीलाई हेर' तर यसको स्वरमा सामान्य परिवर्तन गरेपछि यसको अर्थ हुन्छ एक मूर्ख व्यक्ति । |
| सा'इबा: : | देउताहरूलाई भाकेर छोडेजस्तो अरबहरूले स्वतन्त्र छोडिएको पोथी ऊँट । कुनै बेला एक ऊँटले १० वटा पोथी बच्चा जन्माएमा त्यसलाई खुला चर्न छोडिन्थ्यो, त्यसलाई चढिदैनथ्यो र उसको आफ्नै बच्चाले बाहेक कसैले त्यसको दुध पनि पिउँदैनथ्यो । |
| सल्वा : | अरबको कुनै भाग र छिमेकी देशहरूमा पाइने बट्टाईजस्तै देखिने सेतो एक चराको जाति । यस शब्दको मुल अर्थ हुन्छ- (क) जसले कुनै व्यक्तिलाई प्रसन्न पार्छ, (ख) मह. |
| शहर रमजान : | व्रत बस्ने इस्लामी महिना । |
| तालूत : | बाइबिलमा यसको समानान्तर शब्द हो सौल ( १ साम, १०:२३) । |
| तुवा : | त्यस उपत्यकाको नाम जहाँ अल्लाह मुसाका सामु पहिलो पटक प्रकट भएका थिए । |
| उम्रा : | निम्नवर्गीय हज् जसमा हज्का केही संस्कारहरू छोड्न्छिन् ( सम्पन्न गर्दैनन्) । |
| उन्जुर्ना : | यस शब्दको अर्थ हुन्छ- "हामीलाई सम्मान गर" । |
| वादी अल्-नम्ल : | जिब्रुन र अस्कलान बीचमा स्थित उपत्यकाको नाम । नाम्ला चाहिं एक जातिको नाम हो । |
| वसिला : | एकपछि अर्को गर्दै सातवटा बच्ची जन्माएपछि देवताको नाममा अरबहरूले खुल्ला छोडिएकी एक पोथी ऊँट । सातौं बेतमा जोडी बच्चा पाएको भएमा (भाले र पोथी) पनि तिनलाई खुल्ला छाडिने गरिन्थ्यो । |

जैद : पवित्र नबीका एक स्वतन्त्र गरिएका दास जसले जैनबसित विवाह गरे (र पछि तलाक दिए ), जैनब पवित्र नबीकी सानीमाकी छोरी थिइन् ।

जकात: साहित्यिक अर्थ हो - बृद्धि, शुद्धता, प्राविधिक रूपमा यसले इस्लाम धर्मले अनिवार्यरुपमा निर्धारण गरेको दान बुझिन्छ ।

जक्कूम : धुलो रङ्गको एक वृक्ष, जसका पातकरू साना र गोला हुन्छन्, यसका काँडा हुँदैनन् । यसको पीरो बास्ना हुन्छ र यो तीतो हुन्छ । यो शब्दले विषालु खाद्य भन्ने पनि बुझाउँछ ।

# अनुसूची

(क) अल्लाहका सहकर्मीहरू (शिर्क)

- निषेध गरिएको छ- ४:४९, २२:३२ ।
- अक्षम्य गलती हो- ३१:१४ ।
- का लागि माफी दिन मिल्दैन- ४:४९, ४:११७
- मा कसैले पनि आमा-बाबुको आज्ञापालना गर्नुपर्दैन- २९:९ ।
- ब्रह्माण्डमा एकभन्दा बढी इश्वर भेटिएको भैदिएको भए विवाद उत्पन्न हुन्थ्यो- २१:२३; २३:९२ ।
- त्यस्ता व्यक्ति पथभ्रष्ट पारिएका-हुन्- ३९:४
- अल्लाहको व्यक्तित्वमा गलत- हो- १२:४१; ११२:२,३ ।
- अल्लाहको गुण-दोषभित्र-प्रतिबन्धित छ- ११२:५ ।
- मूर्तिपूजकहरूलाई क्षमदान मिल्दैन- ९:११३ ।
- अल्लाहबाहेक अरुसँग क्षमा माग्ने मानिसहरू कहिल्यै उँभो लाग्न सक्दैनन्- २३:११८ ।

(ख) अल्लाहका गुणहरू

- घमण्ड तोडने , (अल-मुधिल)– ३:२७ ।
- समस्त चेतना (अल-खाबीर)– ४:३६, २२:६४, ६४:९, ६६:४, ६७:१५ ।
- सर्बस्रोता (अल-समी)– ४:५९, २२:६२, २४:६१, ४०:२१ ।
- सर्बज्ञाता (अल-अलिम)– ४:३६, ७१, २२:६०, ३४:२७, ५९:२३, ६४:१२ ।
- सर्बद्रष्टा (अल-बसीर)– ४:५९, २२:७६, ४०:२१,५७, ६०:४ ।
- प्रार्थीका उत्तरदाता (अल-मुजीब)– ११:६२ ।
- सर्बमान्य (अल-शाकुर)– ३५:३५ ।
- सर्बउत्कृष्ट गुणहरू (राफी-उद-दरायात)– ४०:१६ ।
- उपयुक्त दण्ड-सँजायदाता, प्रतिशोधक (अल-मुन्तकीम)– ३:४, ३९:३८ ।
- परोपकारी (अल-बार)– ५२:२९ ।
- सबैद्वारा प्रार्थना गरिने, आजाद (अल-समाद)– ११२:३ ।
- सर्बदाता (अल-वाहाव)– ३:९, ३८:३६ ।
- कृपालु (अल-मुनीम)– १:७ ।
- सम्मानदाता (अल-मुइज)– ३:२७ ।
- सुरक्षादाता (अल-मुमीन)– ५९:२४ ।
- वरदान धारक– ४०:४ ।
- कृपालु, दानशील, अपार दृष्टि (अल-वसी)– ४:१३१, २४:३३।
- करूणापूर्ण (अल-राउफ)– ३:३१, २४:२१ ।
- स्रष्टा, (अल-खालिक)– ३६:८२, ५९:२५ ।
- सर्वोत्कृष्ट स्रष्टा (अहसन-उल-खालेकीन)– २३:१५ ।
- ध्वंसक (अल-मुमीत)– ४०:६९, ५०:४४, ५७:३ ।
- सहमार्ग निर्देशक (अल-रशीद)– ७२:३ ।
- कार्य सम्पादक, सुरक्षक (अल-वकील)– ३:१७४, ४:८२। ११:१३, १७:३, ३३:४ ।
- पापनाशक (अल-अफू)– ४:१५०, २२:६१, ७८:३ ।
- जीविकोपार्जनका साधनहरूका विस्तारकर्ता (अल-वसित)– १७:३१, ३०:३८, ४२:१३ ।
- न्यायी (अल-मुकाइत)– ६०:९ ।
- परम उत्कृष्ट (अल-मुताकाब्बीर)– ५९:२४ ।
- उत्कर्षकर्ता (अल-राफी)– ४०-१६ ।
- भूषाचार परिधानक (अल-मुसावीर)– ५९:२५ ।
- प्रथम (अल-अवाल)– ५७:४ ।
- सहनशील, धैर्यशील (अल-हलिम)– २:२२६, २२:६०, ३३:५२, ६४:१८
- सर्वश्रेष्ठ, क्षमादाता (अल-गफ्फार)– २२:६१, ३८:६७, ६४:१५ ।
- पाप मोचन, माफ गर्ने (गाफीर-इजाम्बे)– ४०:४ ।
- क्षमा दिन उदार (वासे-उल-मग्फिरत्)– ५३:३३ ।
- सबैभन्दा ठूला क्षमादाता (अल-गाफुर)– ४:२५,४४, ५७, २२:६१, ५८:३, ६०:१३, ६४:१५ ।
- मित्र (अल-वाली)– ४:४६, १२:१०२, ४२:१०, २९ ।
- न्यायिक कार्य हुने दिन मानव जातिलाई जम्मा गर्ने (अल-जामी)– ३:१०, ३४:२७
- सबैभन्दा बढी उदार (अल-अक्रम)–

९६:४
– यशस्वी, तेजस्वी (अल-मजिद)– ८५:१६
– दयाशील (अल-रहमान)–१:३ ।
– महान (अल-अजीम)– ४२:५, ५६:९७ ।
– अतुलनीय (अल-कबीर)– ४:३५, २२:६३, ३१:३१, ३४:२४ ।
– अभिभावक, संरक्षक (अल-हफीज)– ३४:२२
– पालक (अल-वकिल)– ४:१७२ ।
– पथप्रदर्शक (अल-हादी)– २२:५५ ।
– मुक्तिदाता (अल-शाफी)– १७:८३, ४१:४४
– सहयोगी (अल-नासीर)– ४:४६ ।
– अदृश्य, जसको अदृश्यताबाट सबै कुरा प्रकटभएको छ (अल-वतीन),–५७:४ ।
– उत्कृष्ट (अल-अलिए)– ४:३५, २२:६३, ३१:३१, ४२:५, ४३:५२ ।
– सर्वोच्च (अल-मुता अली)– १३:१०, ४२:५, ८७:२, ९२:२१ ।
– पवित्र: (अल-कुद्दुस)– ५९-२४ ।
– दुर्वोध्य; सबै सूक्ष्मताका ज्ञाता; अनिष्टभयरहित (अल-लतिफ)- ६: १०४; १२: १०१; २२: ६४; ३१: १७; ४२ : २० ।
– सर्वश्रेष्ठ अनुग्रहशील (अल-अफुव)- ४: ४४
– उत्तराधिकारी (अल- वारिस)- १५ : २४; २१ : ९०; २८: ५९ ।
– न्यायकर्ता (अल-फलाह)- ३४ : २७ ।
– सर्वोत्कृष्ट न्याय (खउर-उल हाकीमीन)- १०: ११०; ९५: ९ ।
– बुद्धिमान न्यायी- ३५: ३ ।
– मानवजातिका राजा (मलिक इन्नाज)- ११४: ३ ।
– दृश्य-अदृश्य सबैका ज्ञाता- ५९ : २३ ।
– अन्तिम (अल-अरवीर)- ५७: ४ ।
– जीवनदाता (अल-मुहथी)- २१: ५१; ४०: ६९
– ज्योति (अल- नूर)- २४: ३६ ।
– जीवित (अल-हाथ) - २: २५६; ३: ३ ।
– अल्लाह; स्वामी (अल-राव)- १: २; ५: २८ ।
– महान आरोहीहरूका स्वामित (धील मुवा रीज)– ७० : ४ ।
– प्रतिष्ठाका मालिक (अल-मजीद)– ८५: ६ ।
– महिमाका स्वामी (अल-जलिल)- ५५-२८ ।
– प्रतिकारका प्रभु (जुल-इन्तिकाम)- ३९:३८ ।
– सार्वभौमिकताका पति (मलिक-हअल-मुल्क)- ६२:२ ।
– राजगद्दीका अधिपति (धूल-अर्स)- २१:२१; ४०:१६; ८५:१६ ।
– मायालु (अल-वादुद) - ११:९१; ८५:१५ ।
– रचयिता (अल-वरी) - ५९: २५ ।
– सत्यका प्रतीक (हक-अल-मोवीन)- २४:२६ ।
– वीजक, हरके सिर्जनाले उनको अस्तित्वलाई प्रष्टाउँछ (अल-जाहीर)- ५७ :४ ।
– फैसला सुनाउने दिनका मालिक ( मालिके याउम-उद-दीन)- १:४ ।
– उत्कृष्ट मालिक (नामुल-माउ-ला)- २२: ७९
– दयावान (अल-रहीम)- १:३; ४:२४, ५७, ९७
– विक्रान्त, वलिष्ट (अल-अजिज)- ४:५७; २२:७५; ५९:२४; ६४:१९ ।
– सवैभन्दा निकट (अल-करीव)– ३४: ५१
– कुलीन (अल-करीम)- २७: ४१ ।
– प्रायस अनुकम्पा, दया, मायाका साथ उत्तरदिने, पश्चात्तापका स्वीकारक (अल-तुवाव)- २:५५; ४: ६५; २४: ११; ४९:१३; ११०: ४ ।
– सर्वशक्तिमान (अल-मुक्तादीर)- ५४:४३, ५६
– एक, अविभक्त (अल-वहिद)- १३: १७८; ३८: ६६; ३९: ५ ।
– मानिस जातिका लागि सफलताको ढोका खोल्नेवाला (अल-फताह)- ३४: २७ ।
– आविभावक, उत्थानकर्ता; जीवनका जनक (लेखक) (अल-वदी)- २: ११८; ३०: २८; ८५: १४ ।
– शान्तिका श्रोत (अल- सलाम)- ५९: २४
– शक्ति र अधिकारका धारणकर्ता (अल-कादीर)- १६:७१; ३०:५५; ६४: २ ।
– शक्तिशाली (अल-कामीय)- २२:७५; ३३:२६; ४०:२३; ५१:५९ ।
– प्रशंसालायक (अल-हमीद)- २२:६५; ३१:२७; ४१:४३; ४२:२९; ६०:७ ।
– संरक्षक, हरेक प्राणीका रक्षक, शक्तिशाली (अल-मुकित)- ४:८६ ।

— रक्षक, पालक (अल-मुहाइमीन)- ५९: २४ ।
— इन्जामकर्ता, सर्वश्रेष्ठ (खइरूल-राजेकीन) - २२:५९; ३४: ४०; ६२:१२ ।
— कडा भन्दा कडा सँजाय (शादीद-इल-अकुब)- ४०:४ ।
— गणक (लेखाजोखा राख्नेवाला), (अल-हसीब)- ४: ७, ८७ ।
— द्रुत गणक (सारी-उल-हिसाब)- १३:४२ ।
— पुनरुत्पादन कर्ण जीवनको (अल-मुइद)- ३०: २८; ८५: १४ ।
— पश्चात्ताप, स्वकिारकर्ता (काबिले-ताउब)-४०: ४ ।
— प्रतिकारक शक्तिका स्रोत (धनु-तोफाम)- ३: ५ ।
— शासक (अल-वाली)– ४२: ५ ।
— आत्मवृत्तिकर्ता, सर्वाधार (अल-क्य्युम)- ४०: ४ ।
— आत्मनिर्भर (अल-गनीय)- २: २६८; २२: ६५; २७: ४१; ३१: २७; ६०: ७; ६४: ७ ।
— सार्वभौम (अल-मलिक)- ५९: २९ ।
— सबल (अल-मतीन)- ५१: ५९ ।
— समनकर्ता, सुधारकर्ता (अल-जब्बार)- ५९: २४ ।
— पूर्ण (अल-काफी)- ३९: ३७ ।
— सर्वोच्च (अल-काहार)- १२: ४०; ३८: ६६; ३९: ५ ।
— पालक, सर्वोच्च (अल-रजाक)- २२: ५९; ५१: ५९; ६२: १२ ।
— द्रुत श्रेस्ताकार (सारी-उल-हिसाबी)-३: २००
— सत्य (अल-हक)- १०: ३३ ।
— अनुपम, एकताका अधिपति (अल-आसद)- ११२: २ ।
— सजग, चनाखो (अल-रकीब)- ३३: ५३ ।
— बुद्धिमान् (अल-हकीम)- ४: ५७; ५९: २५; ६४: १९ ।
— प्रत्येक्षदर्शी, अवलोकनकर्ता (अल-साहीद)-४: ८०; ३३: ५६; ३४: ४८ ।

(ग) अल्लाहको कृपा

— अनगिन्ती छन्- १४: ३५; १६: १९ ।
— अल्लाह मानव प्रति कृपालु छ - २७: ७४

(घ) अल्लाहसँग मित्रता

— आफ्नो जिम्मेवारी प्रति (सजग व्यक्तिहरूका लागि हो- ४५: २० ।
— विश्वास गर्ने (विश्वासी) हरूका लागि हो- २: २५८ ।
— पर्याप्त छ- ४: ४६ ।
— अल्लाहका संरक्षक मीन हुनुहुन्छ - ४२: १० ।

(ङ) अल्लाह, यशस्वी बन्दछ, उसको स्तुतिबाट हरेक कुरा-वस्तुले **स्वयम्**लाई यशस्वी, महान बनाउँछ- १७: ४५; २४: ४२; ५९: २; ६२: २ ।
— अल्लाहले स्तुति, प्रशंसाका माध्यमबाट आफूलाई कीर्तिमान बनाउन आदेश दिन्छ- ३३: ४३; ४०: ५६; ८७: २ ।
— अल्लाहको स्तुति सूर्योदय भन्दा अघि, सूर्यास्तका बेला र राती गर- ५०: ४०, ४१ ।
— अल्लाहको स्तुति तारा अस्ताउने बेलामा गर- ५२: ५० ।
— अल्लाहको स्तुति मध्य रातमा गर- ७६: २७ ।
— फरिस्ताहरू अल्लाहको स्तुति गर्दछन्- २:३१; ४०: ८ ।
— चट्याङले प्रशंसाका माध्यमबाट, अल्लाहको स्तुति गर्दछ- १३: १४ ।
— चराहरू (आध्यात्मिक दृष्टिकोणले शिक्षित मानिस) र पर्वतहरू ( मुखियाहरू) इश्वरको स्तुति गर्दछन्- ३८: १९, २० ।
— पर्वत र चराचुरुङ्गीहरू (सच्चरित्रवान, इमान्दार व्यक्ति) अल्लाहको प्रशंसा डेभिडसँग गर्दछन्- २१: ८०; ३४: ११ ।

(च) अल्लाह, ज्ञानको

— स्वर्ग र धरा भीर फैलन्छ- २: २५६ ।
— जे-जुनले मानिसको मनमा दुःख पुऱ्याउँछ- ५०: १७ ।

- इस्लामले शत्रुसित पनि न्याय (सङ्गत व्यवहार) गर्ने आदेश दिएको छ- ५: ९ ।
- अविश्वासीहरूप्रति दया तथा न्यायपूर्ण व्यवहार गर्ने आदेश- ६०: ९ ।
- सबैसित उत्तम व्यवहार गर्न आदेश- ४: ३७ ।
- इस्लाम नूह, इब्राहिम, मूसा तथा ईसाको धर्मसदृश रहेको छ- ४२: १४ ।
- इस्लामको विजयबारे भविष्यवाणी- १३-४२ ।
- पहिलाका तनि शताब्दीहरूमा उन्नति र पछिका दस शताब्दीमा अवनति हुने भविष्यवाणी- ३२: ६ ।
- सबै नबीहरूले इस्लामप्रति विश्वास स्थापना गर्नु आवश्यक- २: १३७ ।
- इस्लाम प्रचार विश्वासीजनप्रति अनिवार्य गरिएको छ- ९: १२३ ।

इजरायलका सन्तान

- याकूबको नाम इजरायल थियो- ३: ९४; १९: ५९ ।
- तिनीहरूका समयमा तिनीहरू अन्य जातिहरूभन्दा श्रेष्ठ थिए- २: ४८; २: १२३ ।
- तिनीहरूप्रति अल्लाहको निरन्तर अनुग्रह- २: ४८; २: १२३ ।
- तिनीहरूप्रति फिरौनको कठोरता- २: ५०; ७: १४२; १४: ७; २८: ५ ।
- फिरौनको अत्याचारबाट मुक्ति प्रदान गर्न मूसालाई पठाइएको- २८: ६ ।
- तिनीहरूप्रति अत्याचार नगर्न र तिनीहरूलाई मुक्ति दिन मूसाको फिरौनसित आग्रह- ७: १०६, २०: ४८ ।
- तिनीहरूलानई छोड्ने फिरौन र उसका मुखियाहरूको वचन परन्तु तिनीहरूले वचन भङ्ग गरे- ४३: ५०, ५१ ।
- इजिप्टबाहिर तिनीहरूलाई लिएर जान मूसालाई अल्लाहको आदेश- २०: ७८; २६: ५३, ४४: २४ ।
- तिनीहरूको समुद्र तर्नु र फिरौन र त्यसका मानिसहरू समुद्रमा डुब्नु- २: ५१; ७: १३७, १७: १०४ ।
- अस्कोडसको समयमा तिर्नीहरूको संख्या- २: २४४ ।
- सेनाई मरुभूमिबाट यात्रा गर्दा तिनीहरूमाथि बादलको छायाँ- २: ५८; ७: १६१ ।
- समुद्र तरेपछि पुनः मूर्तिपूजातर्फ इजरायिलीहरू आकर्षित- ७: १३९ ।
- मूसासित पानी प्राप्तिको आग्रह तथा मूसाद्वारा अल्लाहको आदेशले लौरो ढुङ्गामा हिर्काइ पानीको मूल फुटाउनु- २: ६१; ७: १६१ ।
- मन्न र सल्वा अवतीर्ण हुनु- २: ५८ ।
- मूसाको तूर यात्रा तथा उनीपछि बाछालाई पूज्ने घटना- २: ५२, ९४
- मूर्ति पूजकहरूलाई मूसाको दण्ड- २: ५५ ।
- त्यो बाछोलाई जलाउने घटना- २०: ९८
- एउटा गाई वध गर्न अल्लाहको तिनीहरूलाई आदेश- २: ६८, ७० ।
- मन्न र सल्वा बाहेक अन्य तरकारीहरू खाने इच्छा प्रकट- २: ६२ ।
- एउटा अङ्गीकारका निम्ति तूरको फेदीमा तिनीहरूका मुखियाहरूलाई लगियो- २: ६४, ९४; ७: १७२ ।
- अल्लाहलाई प्रत्यक्ष देख्न मूसाको आग्रह- २: ५६ ।
- सरदारहरूलाई भूकम्पले घेर्‍यो- ७: १५६
- तिनीहरूलाई पेलेस्टाइनमा दाखिल हुने मूसाको आदेश परन्तु तिनीहरूद्वारा अस्वीकार- ५: २२ ।
- तिनीहरूले अल्लाहका चिह्नहरूको अस्वीकार गरे र नबीहरूको हत्या गरे- २: ६२ ।
- सवथका सम्वनधमा सीमोलङ्घन

जोना: (युनूस नबी)

- जसको नाम जुल् नुन् थियो- २१: ८८ ।
- सन्देशवाहककहरूमध्ये एक थिए- ४: १६४; ६: ८७, ३७: १४० ।
- जसलाई आफ्ना मानिसहरूमाथि दर्जा प्रदान गरिएको थियो- ६: ८७ ।
- डुङ्गामा यात्रा गर्ने प्रयास गरेका थिए- ३७: १४१ ।
- डुङ्गामा आँधीमा घेरियो र उनी त्यसबाट फ्याँकिइए- ३७: १४२ ।
- एउटा व्हेल माछाले निल्यो र पछि बाहिर उगेल्यो- ३७: १४३- १४६ ।
- उनका सामुन्ने फर्सीको बोट उमारियो- ३७: १४७ ।
- जसलाई एक लाख मानिसहरूतर्फ नबीस्वरूप पठाइएको थियो- ३७: १४८ ।
- जसप्रति मानिसहरूले विश्वास गरे र तिनीहरूको दण्ड निवारण गरियो- १०: ९९ ।
- उनी एक जातियसदृय थिए, कारण उनीप्रति विश्वास मरेकै कारण मानिसहरूलाई यस संसारमा जीवका प्रदान गरियो- ३७: १४९ ।

जोब (अय्यूब नबी)

- उल्लेख छ उनको- ४: १६४; ६: ८५; २१: ८४, ८५; ३८: ४२ ।
- पर्वतीय इलाकामा बसोवास गर्थे- ३८: ४५ ।
- जसलाई शत्रुहरूले सताएका थिए- ३८: ४२ ।
- जसलाई आप्रवासको आदेश दिइएको थियो- ३८: ४३ ।
- आप्रवासपछि आफ्ना परिवारसित भेट- २१: ८५; ३८: ४४ ।

जोसेफ (यूसुफ नबी)

- जसका जीवनका घटनाहरूमा पवित्र नबीबारे भविष्यवाणी- १२: ८ ।
- वाल्यकालमै अल्लाहप्रति समर्पित थिए तथा साँचा सपनाहरू देख्ने गर्थे- १२: ५ ।
- आफ्ना दाईहरूलाई सपनाबारे जानकारी नदिन उनलाई याकूबको आदेश- १२: ६ ।
- दाईहरू उनको डाहा गर्थे- १२: ९ ।
- दाईहरूले उनलाई मार्ने योजना बनाए- १२: १० ।
- दाईहरूले उनलाई जङ्गलमा लगेर गहिरो इनारभित्र फ्याँकिदिए- १२: १६ ।
- दाईहरूद्वारा उनलाई ब्वाँसोले खायो भन्ने याकूबलाई मिथ्या सूचना- १२: १८ ।
- एउटा यात्रीदलद्वारा उनको उद्धार र दासस्वरूप उनको बिक्री- १२: २०, २१ ।
- इजिप्टका राजाद्वारा उनको खरीद- १२: २२

जनता र जातिहरू

१. -आदका- ७: ६६; ११: ५१ ।
   -माथि विध्वंशकारी हावाहुरीको सजाय- ४६: २५, २६ ।
२. -समूहका जाति- ७: ७४; ११: ६२ ।
   -का लागी पोथी ऊँटको चिन्ह- ११: ६५
   -ऊँटलाई उनीहरूले सजाय दिए र चेतावनी अनुसार सजाय पाए- ११: ६८
   -लाई भूकम्पले पक्रियो- ७: ७९ ।
   -सजाय प्राप्त भएपछि भूईमा लम्पसार परे- ७ : ७९ ।
३. जंगलमा बस्ने जातिहरू (असहाबूल आइका)
   -शोएवका जातिलाई त्यसो भनिन्थ्यो- १५: ७९ ।
   -तथा तिनका ठाउँहरू- १५:७९; ५०: १५
४. तुव्वाका जनता -र विनाश- ४४: ३८; ५०: १५ ।
५. ईनार (असहाबूल रस) का जनता-
   -थमूद जातिकै एक अंश थिए- २५ : ३९ ।
६. हात्तीका जनजाति (असहाबूल फिल)
   -अबिसिनियाका राजाको येमेनस्थित हाकिम र उसको सैन्य- १०५: २ ।
   -वैतूल्ला र उसको नाशका लागि हात्तिका जातिको योजना- १०५: ३ ।
७. सेबियनहरू- ५: ७० ।
८. ओडारका जाति- (असहावूल काहफ)

